श्रीमहेन्द्रसंस्कृतविश्वविद्यालयग्रन्थमालायाः षट्पञ्चाशत्तमं पुष्पम् ।

# लघुसिद्धान्तकौमुदी

श्रीमद्विद्वद्वरवरदराजाचार्यविरचिता

सुबोधिनीनाम्न्या नेपालीटीकया टिप्पण्या च समलंकृता

परिशिष्टाद्यभागे नन्दिकेश्वरकाशिकाभिधया

सूत्रचतुर्दशीपारमर्थिकव्याख्यया च समन्विता

टीकाकारष्टिप्पणीकारश्च-

डा. दुर्गादत्तशर्मा उपाध्यायः

प्राध्यापकः

वाल्मीकिविद्यापीठस्य

प्रकाशकः

महेन्द्रसंस्कृतविश्वविद्यालयः

# लघुसिद्धान्तकौमुदी नेपालीटीकासहिता

प्रा. डा. दुर्गादत्तशर्मा उपाध्यायः



१. **नाम-** **डा. दुर्गादत्तशर्मा उपाध्याय**

२. **जन्ममिति-** १९९६/१२/३

३. **जन्मस्थल-** जैदी गा. वि. स. वडा नं. १ बाग्लुङ्ग

४. **अध्ययन/योग्यता-** साहित्याचार्य प्रथमश्रेणी, सम्पूर्णानन्द सं. वि. वि. वाराणसी।
वी.एड्., त्रिभुवन विश्वविद्यालय, नेपाल।

५. **पद-** प्राध्यापक म. सं. वि. वाल्मीकिविद्यापीठ, काठमाडौं

६.(क) **प्रकाशित रचना-** **शिशुपालवधमहाकाव्यद्वितीयसर्गको नेपालीपद्यानुवाद** म. सं. वि. अनुसन्धानकेन्द्रबाट प्रकाशित ऋतम्भरापत्रिकाको तेस्रो, चौथो अङ्कमा प्रकाशित छ। **शिवमहिम्नःस्तोत्रको नेपालीपद्यानुवाद** उक्त ऋतम्भरापत्रिकाको छैटौ अङ्कमा प्रकाशित छ। संस्कृतभाषामा लेखिएका अरू विविध रचनाहरू हैमवती, मर्यादा, मधुरिमा, श्री ५ वीरेन्द्रस्वर्णमहोत्सवस्मारिका आदि पत्रिकामा प्रकाशित छन्।

(ख) **अप्रकाशित रचना-** अरू संस्कृत एवं नेपालीमा लेखिएका धेरै फुटकर अप्रकाशित रचनाहरू छन्।

७. **ग्रन्थसम्पादन-** महेन्द्रसंस्कृत विश्वविद्यालयको सम्पादकमण्डलमा रही निम्नलिखित ग्रन्थहरू सम्पादन गरेको।

| | | |
|---|---|---|
| **स्थानेश्वर गौतम आदिद्वारा लिखित** | (क) | व्याकरण प्रवेशिका |
| **तीर्थराज सुवेदी आदिद्वारा लिखित** | (ख) | साहित्य प्रवेशिका |
| **दधिराममरासिनिरचित** | (ग) | कर्मकाण्डभास्करः |
| | (घ) | श्रीरामचरितामृतम् |
| **उमानाथपन्थिरचित** | (ङ) | गण्डकीगौरवम् |
| | (च) | श्री ५ वीरेन्द्रसिंहासनारोहणस्वर्णमहोत्सवस्मारिका |
| **मीनप्रसाद नेपालकृत** | (छ) | ब्रह्मसूत्रशङ्करभाष्यम् |
| **कुलचन्द्रगौतमकृत** | (ज) | संस्कृतनेपाली शब्दकोश |
| **फणीन्द्रराज पाण्डेयकृत** | (झ) | संस्कृतनेपाली बृहच्छब्दकोश |
| **म. सं. वि. अनुसन्धानपत्रिका** | (ञ) | ऋतम्भरा द्वितीय अङ्कदेखि सातौं अङ्कसम्म |

८. **विश्वविद्यालयीय कार्यमा संलग्नता-** महेन्द्र संस्कृत विश्वविद्यालयको शास्त्रानुसन्धानपरिषद्, प्राज्ञिकपरिषद्, अनुसन्धानपरिषद्, साहित्यविषयसमिति, अनिवार्यसंस्कृतशिक्षणसमिति, संस्कृतभाषाप्रशिक्षणसमिति, परीक्षासमितिको सदस्य।

९. महेन्द्र संस्कृत विश्वविद्यालयमा विद्यावारिधि अनुसन्धानमा लागेका अनुसन्धाताहरूको विशेषज्ञको रूपमा संलग्न।



शुक्लां ब्रह्मविचारसारपरमामाद्यां जगद्व्यापिनीं
वीणापुस्तकधारिणीमभयदां जाड्यान्धकारापहाम्।
हस्ते स्फाटिकमालिकां विदधतीं पद्मासने संस्थितां
वन्दे तां परमेश्वरीं भगवतीं बुद्धिप्रदां शारदाम्॥

# सम्मति

संस्कृतभाषा धेरै पुरानो र अत्यन्त विकसित भाषा हो । विश्वका सबैभन्दा पुराना ग्रन्थ चारै वेद संस्कृत भाषामा छन् । संस्कृत वाङ्मय वेद, पुराण, रामायण, महाभारत, आदि विविध ग्रन्थराशिले विशाल; साङ्ख्य, वेदान्त, न्याय, योग, आदि शास्त्रका दार्शनिक सूक्ष्म विचारले गम्भीर; विश्वजनीन पवित्र विचाररूपी सङ्लो जलले भरिएको एक महासागर हो । यसभित्र हाम्रा पूर्वजका मनन चिन्तन र अनुशीलनबाट आविष्कार गरिएका असङ्ख्य ज्ञान-विज्ञानका रत्नहरू रहेका छन् । यो संस्कृतवाङ्मयसागरमा डुबुल्की लगाएर ती रत्नहरूको उद्धरण गरी विश्वलाई वितरण गर्न सकेमा विश्वमा बढेको आसुरीभावको अन्धकार हटेर शान्तिको आलोक फैलिन सक्छ ।

परोपकार, मैत्री, क्षमा, दया, नैतिकता आदि सद्गुणको पाठ सिकाएर वैचारिक स्वस्थताको विकास गरी संसारमा शान्तिको सञ्चार गर्ने क्षमता संस्कृतवाङ्मयभित्र छ । संस्कृतवाङ्मयभित्र नै विश्वबन्धुत्ववाद मानवतावाद र सार्वभौम मानवधर्म अन्तर्निहित छ विज्ञानसम्बन्धमा पनि संस्कृत वाङ्मयभित्र आधुनिक वैज्ञानिकहरूले परिलक्षित गर्न नसकेका तर प्राचीन ऋषिमुनिहरूले दिग्दर्शन गरेर छोडेका अमूल्य निधिहरू अझै अनुद्घाटित छन् । संस्कृतवाङ्मयभित्र रहेको त्यो बहुमूल्य ज्ञान-विज्ञानको निधिलाई प्रकाशमा ल्याएर ज्ञानद्वारा शान्ति, विज्ञानद्वारा समृद्धि प्राप्त गर्नु सबै मानवको अधिकार र कर्तव्य हो । अतः संस्कृतभाषामा सबैले श्रद्धा र प्रवृत्ति जगाउनु आवश्यक छ । त्यसमा पनि हामी नेपालीहरूको सभ्यता र संस्कृतिको मुहान नै संस्कृत भाषा भएकोले आफ्नो संस्कृति र सभ्यता थाहा पाउन पनि संस्कृत भाषा सिक्नु पर्दछ ।

हाम्रा जन्मदेखि मृत्युपर्यन्तका संस्कार संस्कृतभाषाद्वारा सम्पन्न हुन्छन् । हाम्रा दैनिक आचार स्नान, सन्ध्या, तर्पण, देवपूजा आदि संस्कृतभाषाद्वारा गरिन्छन् । हाम्रा चाडपर्व रीतिरिवाजहरूमा संस्कृतकै प्रत्यक्ष प्रभाव छ । हाम्रो पुरानो इतिहास प्रायः संस्कृतभाषामा नै लेखिएको छ र त्यो बुझ्न संस्कृतभाषाको गम्भीर ज्ञान हुनुपर्दछ । हाम्रो जीवनदर्शन, वेषभूषा सामाजिक स्थिति कलाकृति आदि सबै कुरामा संस्कृतशास्त्रको नै प्रभाव देखिन्छ । हाम्रो राष्ट्रभाषाको साहित्य संस्कृतसाहित्यबाट नै अनुप्राणित छ । त्यसभित्र रहेका शब्दको अर्थ र रीति, गुण, अलङ्कार, रस, ध्वनि आदि काव्यतत्त्व केलाउन संस्कृतभाषाको नै शरण लिनुपर्दछ । यी सारा कुरालाई हृदयङ्गम गरी सम्पूर्ण नेपालीहरूले सर्वप्रथम संस्कृतभाषाको अध्ययन गर्नुपर्ने आवश्यकता देखिन्छ ।

संस्कृत-भाषा र संस्कृत-व्याकरण अतिकठिन छ भन्ने धारणा सामान्यतः जनमानसमा देखिए पनि त्यस्तो कठिनता यसमा छैन । यस भाषाको व्याकरणमा समयानुसार परिष्कार एवं सरलीकरण नहुनु, यस भाषाका पाठ्यसामग्रीमा प्रचलित आधुनिक विषयहरूको समावेश नहुनु अथवा त्यस्ता ग्रन्थहरूको सम्पादन नहुनु, प्रचारप्रसारको कमी हुनु आदि यसमा कठिनता महसूस गराउने र अरुचि पैदा गराउने मुख्य कारण हुन् । किन्तु अरू भाषा र अरू भाषाका व्याकरणभन्दा संस्कृत-भाषा एवं संस्कृत-व्याकरण केही जटिल भए पनि पाठकमा पढ्ने प्रवृत्ति र जिज्ञासाको उदय भएमा त्यति कठिन लाग्ने छैन ।

जुनसुकै भाषामा पनि प्रवेश गर्ने द्वार त्यस भाषाको व्याकरण हुन्छ । अतः संस्कृतभाषामा प्रवेश गर्ने द्वार संस्कृतव्याकरण हो । संस्कृतभाषाका व्याकरण ऐन्द्र, चान्द्र आदि नौवटा छन् ।

*"ऐन्द्रं चान्द्रं काशकृत्स्नं कौमारं शाकटायनम् ।*
*सारस्वतं चापिशलं शाकलं पाणिनीयकम् ॥"*

यी नौ व्याकरणमध्ये संस्कृतका सबै शब्दको व्युत्पादन गर्ने वैज्ञानिक क्षमता पाणिनीय व्याकरणमा नै भएकोले पौरस्त्य र पाश्चात्य सबै विद्वान्हरूले पाणिनीय व्याकरणलाई सर्वश्रेष्ठ मानेका छन् । यसैले पाणिनीयव्याकरण नै अहिले सर्वत्र प्रचलनमा आएको छ । पाणिनीयव्याकरणको प्रथम सोपान एवं संस्कृत-भाषा जिज्ञासुले सर्वप्रथम पढ्नुपर्ने पुस्तक "लघुसिद्धान्तकौमुदी" नै हो ।

लघुसिद्धान्तकौमुदीको राम्रो अध्ययन गरेपछि जिज्ञासु पाठकहरू गहन व्याकरणशास्त्रमा सजिलैसँग प्रवेश गर्न सक्दछन् । अतः लघुसिद्धान्तकौमुदी अत्यन्त नै लोकप्रिय भएको छ । यसका संस्कृत, हिन्दी, बङ्गाली आदि भाषामा धेरै टीकाहरू लेखिएका छन् । नेपाली भाषामा पनि दुई टीका छन् । एक अर्घाखाँची खिदिमनिवासी पं. टीकाराम धनञ्जयले लेखेको टीका र अर्को झापानिवासी पं. भवानीशङ्करले लेखेको टीका । यी दुवै टीका रूपसिद्धिप्रक्रिया आदि विषयवस्तुको संक्षिप्तता र पुरानो भाषाशैलीका कारण अध्ययन अध्यापनमा त्यति सुगम छैनन्, वर्तमान समयमा सर्वसुलभ पनि छैनन् । अतः संस्कृतभाषा सिक्न चाहने जिज्ञासुहरू एवं संस्कृत पढ्ने छात्रछात्राहरूलाई राष्ट्रभाषा नेपालीको माध्यमबाट गहनतम व्याकरण विषय जान्न सरल र सुगम होस् भन्ने उद्देश्यले यस विश्वविद्यालयका प्राध्यापक डा. दुर्गादत्तशर्मा उपाध्यायलाई लघुसिद्धान्तकौमुदीको टीका लेख्न लगाइएको हो ।

यो टीकामा लेखकले धेरै प्रयास गर्नुभएको छ । व्याकरणको वास्तविक मर्म बुझाउने उद्देश्यले सर्वत्र सुस्पष्ट ढङ्गबाट विश्लेषणात्मक विस्तृत व्याख्यान र आवश्यक स्थलमा महत्वपूर्ण टिप्पणीसमेत समावेश भएको यो टीका जिज्ञासु पाठकवर्गका निमित्त अत्यन्त उपयोगी सिद्ध हुनेछ भन्ने कुरामा म विश्वस्त छु । आज नेपाली टीकासहितको यो लघुसिद्धान्तकौमुदी विश्वविद्यालयबाट प्रकाशन गर्न पाउँदा मलाई खुशी लागेको छ ।

अन्त्यमा कठिन परिश्रमसाथ विस्तृत टीका लेखी विश्वविद्यालयलाई समर्पण गर्नुहुने प्रा. डा. दुर्गादत्तशर्मा उपाध्यायलाई शतशः हार्दिक धन्यवाद प्रदान गर्दै यस कार्यमा सहयोग पुऱ्याउने सबै महानुभावहरूलाई साधुवाद ज्ञापन गर्दछु ।

**माधवराज गौतम**
*उपकुलपति*
महेन्द्र संस्कृत विश्वविद्यालय
काठमाडौं ।

**२०५७ विजयादशमी**

# प्रकाशकीय

भाषा, साहित्य, व्याकरण, कोश, दर्शन, तन्त्रशास्त्र र आयुर्वेद एवं संस्कारसम्बन्धी ग्रन्थहरूको प्रकाशन गरी संस्कृत वाङ्मयको विकासका साथै यसभित्र रहेका सामाजिक परिवेशसँग प्रत्यक्ष सम्बन्ध राख्ने व्यवसायमूलक विविध विषयहरूलाई जनसमक्ष पुऱ्याउने उद्देश्यले महेन्द्र संस्कृत विश्वविद्यालयले धेरै ग्रन्थहरूको प्रकाशन गर्दै आएको छ ।

यसै सन्दर्भमा कौमुदीको अध्ययन कठिन हुन्छ भन्ने जनसामान्यको धारणामा परिवर्तन ल्याई पठनपाठनमा सरलपन ल्याउने उद्देश्यले शब्दसिद्धिप्रक्रियालाई सरल ढङ्गले बुझ्ने बुझाउने गरी प्रा.डा. दुर्गादत्त शर्मा पौडेलले विश्वविद्यालयको अनुरोधमा लघुसिद्धान्तकौमुदीको नेपाली भाषामा व्याख्यासहित टीका लेखेर प्रशंसनीय कार्य गर्नुभएको छ । यद्यपि यसभन्दा पूर्व लघुकौमुदीका नेपाली टीका नलेखिएका हैनन् र सरलीकरण गर्ने प्रयास भएको पनि पाइन्छ, तर डा. दुर्गादत्तले मूल ग्रन्थको कथन र आशयलाई आफ्नो व्याख्या र विश्लेषणद्वारा नवीनता थप्नुभएको अनुभव हुन्छ । उहाँले सरलभन्दा सरल र स्पष्टीकरणको ढङ्गबाट पाठकवर्गलाई विषयवस्तुको ज्ञान गराउन हरतरहले प्रयास गर्नुभएको छ । उहाँको यो प्रयास निकै स्तुत्य छ । यसमा अनुवादमात्र नभएर शङ्काहरूको समाधान, विश्लेषण, उदाहरण र टिप्पणी जस्ता विविध पक्षहरू समाहित छन् ।

शङ्काहरूको समाधान गर्ने क्रममा काशिकावृत्ति, माधवीय धातुवृत्ति, वैयाकरणभूषणसार र पातञ्जल महाभाष्य आदि प्रामाणिक ग्रन्थहरूको आशयलाई लिएर विभिन्न स्थलहरूमा विश्लेषणात्मक व्याख्या गरिएको छ । उदाहरणार्थ 'अबोभूवन्' यहाँ माधवीय धातुवृत्तिकार एवं भट्टोजिदीक्षितको मत स्पष्ट देखाइएको छ । त्यस्तै मात्किम् अमुकेऽत्र यहाँ "असति माद्ग्रहणे एकारोऽप्यनुवर्तेत" यस वाक्यमा, अपि शब्द समुच्चयार्थक छ भन्ने पक्ष र अपि शब्द अवधारणार्थक छ भन्ने पक्ष देखाएर महत्त्वपूर्ण विश्लेषण गरिएको छ । "अप्तृन्निति सूत्रे नप्त्रादिग्रहणं व्युत्पत्तिपक्षे नियमार्थम्" यस प्रसङ्गमा व्युत्पत्ति पक्ष र अव्युत्पत्ति पक्षको आशय छुट्टाछुट्टै देखाएर शङ्का समाधान गर्ने क्रममा प्रत्युदाहरणशैली र सामान्य प्रक्रियाशैलीबाट समीक्षा गरिएको छ । 'प्रशान्त्सु' यहाँ धुट् आगम हुँदैन भन्ने कसैकसैको भनाइलाई सप्रमाण खण्डन गरिएको छ । ज्ञान शब्दमा सम्बुद्धिको लोप हुने कतर शब्दको सम्बुद्धिमा किन लोप नहुने ? यस सम्बन्धमा टीकाकार डा. पौडेलले युक्तिहरू दिएर स्पष्ट रूपमा बुझाउनुभएको छ । "अष्टभ्य इति वक्तव्ये कृतात्वनिर्देशो जश्शसोर्विषये आत्वं ज्ञापयति" यस ठाउँमा पनि विस्तृत विवेचना गरेर बोद्धव्य विषयको विशदीकरण गरी सन्देह निवारण गरिएको छ ।

युष्मद्, अस्मद् शब्दमा हुने वाम्, नौ, ते, मे, वस्, नस् आदेशको उदाहरण 'श्रीशस्त्वाऽवतु मापीह' यस पद्यको पाठकहरूलाई सुगमरूपमा ज्ञान हुने गरी विस्तृत व्याख्यान गरिएको छ । विश्लेषण क्रममा 'व्याघ्री', 'अश्वक्रीती', 'कच्छपी' यहाँ "गतिकारकोपपदानाम्" यो वार्त्तिक लगाएर सुप् ल्याउनुभन्दा पहिले गति, कारक र उपपदको समास गर्दा कस्तो रूप हुन्छ, सुप् ल्याएर समास गर्दा कस्तो रूप हुन्छ, किन सुप् ल्याउनुभन्दा पहिले समास गर्नुपऱ्यो भन्ने विषयमा विस्तृत विश्लेषण गरेर विषयवस्तुलाई स्पष्टचाइएको छ । गवाक् शब्दका एक्काईस वचनका रूपहरूको स्पष्ट रूपमा सिद्धिप्रक्रिया देखाइएको छ । साथै रूपतालिकामा ती रूपहरू

गत्यर्थक र पूजार्थकका अलग अलग गरेर देखाइएका छन्। "गवाक्शब्दस्य रूपाणि" इत्यादि कारिकाको स्पष्ट व्याख्यान र यस कारिकामा उल्लिखित १०९ रूपहरू "चयो द्वितीया शरि" नलगाइकन गिन्ती गरिएका छन् "चयो द्वितीयाः०" यो वार्तिक लगाउँदा ११२ रूप हुन्छन् भन्ने कुरा रूप गनेर स्पष्ट गरिएको छ।

सन्धि-प्रक्रियामा र अन्यत्र पनि 'अन्य उदाहरण' प्रस्तुत गर्दा प्रसिद्ध उदाहरणहरू दिइएका छन्। 'मृन्मयम्' मा णत्व हुँदैन भन्ने विषयमा काशिकाको उदाहरण दिएर शङ्का निवारण गरिएको छ। उपसर्गको योगमा धात्वर्थको भिन्नता देखाउँदा प्रसिद्ध अर्थलाई छोडिएको छैन। जस्तै प्रभवति, संभवति, प्रहरति, संहरति इत्यादि बाध्यबाधकताभावमा "परनित्यान्तरङ्गा-पवादानामुत्तरोत्तरं बलीयः" यो परिभाषा अनुसार साधन-प्रक्रिया सिद्धि गरिएको छ। जस्तै शिवच्छायामा शिवत् छाया - शिवद् छाया – शिवज् + छाया = शिवच्छाया इत्यादि।

लिट् लकारको 'थल्' मा कुन धातुको वैकल्पिक इट् आगम हुन्छ, कुन धातुको नित्य इट् हुन्छ, कुन धातु अनिट् हुन्छ भन्नेबारे विस्तृत विवेचनपूर्वक स्पष्टीकरण गरिएको छ। 'व' र 'म' मा वैकल्पिक इट् हुने वा नित्य हुने भन्ने विषयमा व्रश्चू धातु र मृजू धातु एवं धूञ् धातु समेतलाई लिएर इट् आगमबारे माधवीय धातुवृत्तिकारको आशय अनुसार विवेचन गरिएको छ। कृदन्तमा "कुम्भकारः" यस प्रयोगमा षष्ठ्यन्त कुम्भ शब्ददेखि नै अण् प्रत्यय हुन्छ भन्नेबारे लेखकले युक्तिपूर्वक विश्लेषण गरी शङ्काको समाधान गर्नुभएको छ'। यी केही उदाहरण मात्र हुन् यस्ता कुराहरू यहाँ धेरै छन्। कहीं पनि पाठकहरूलाई सन्देह हुने ठाउँमा बाँकी नराखेर विश्लेषण गरिएको छ।

वस्तुतः यो टीका स्वयं शोधकार्य जस्तै छ र व्याकरण विषयका शोधार्थीहरूलाई समेत महत्त्वपूर्ण सामग्री हुने देखिन्छ। ठूलो परिश्रमपूर्वक लेखिएको यो ग्रन्थ व्याकरणका अध्येता र अध्यापकहरूको निम्ति पनि फलदायी हुनेछ भन्ने मैले संझेको छु।

विश्वविद्यालयको समग्र विकासमा सदैव प्रयत्नशील उपकुलपति माधवराज गौतमज्यूकै सद्भाव र प्रेरणाबाट यो पुस्तक महेन्द्र संस्कृत विश्वविद्यालयको ५६ औं पुष्पको रूपमा प्रकाशित हुन सकेको छ।

अन्तमा बहुमुखी प्रतिभाका धनी डा. दुर्गादत्त शर्मा उपाध्याय पौडेलले आफ्ना यस्तै लेखनकार्यहरू र अन्य क्रियाकलापद्वारा विश्वविद्यालयको प्राज्ञिक उन्नयनमा जो महत्वपूर्ण सहयोग गर्नुभएको छ, त्यो मेरो मानसपटलमा सदैव अविस्मरणीय रूपमा रहनेछ। अतः म विद्वान् लेखकप्रति शतशः हार्दिक धन्यवाद व्यक्त गर्दछु।

सावधानीपूर्वक मुद्रणकार्य गरी ग्रन्थको आकर्षणता ल्याउन समेत पूर्ण सहयोग गर्नुभएकोमा आगम छापाखानाका प्रबन्धक श्री गुहनाथ पौडेलज्यूप्रति हार्दिक धन्यवाद टक्र्याउँछु। साथै यो ग्रन्थको टङ्कणकार्य गर्ने खडोस सुनुवार, असीन राई, सुन्दर प्रसाद पाण्डे एवं पुस्तकको सेटिङ्ग मिलाउने काम गर्नुहुने समीर मुखिया (सुनुवार)प्रति र अन्य सबै सहयोगीप्रति साधुवाद ज्ञापन गर्दछु।

**प्रा. डा. बाबुराम शर्मा पोखेल**
*शिक्षाध्यक्ष*
महेन्द्र संस्कृत विश्वविद्यालय

**२०५७ विजयादशमी**

# मन्तव्य

संस्कृतभाषा अगाध र विशाल छ। यस भाषामा ज्ञान, विज्ञान, विद्या, उपविद्या सबै छन्। यसैले संस्कृतभाषा सबैले पढ्न योग्य र उपादेय छ। संस्कृतभाषाभित्र रहेको ज्ञान र विज्ञान विश्वमा शान्ति समृद्धिको आलोक फैलाउन समर्थ छ। साहित्यिक दृष्टिकोणले संस्कृत भाषा महत्वपूर्ण सूक्तिहरूको सिन्धु हो। संस्कृतभाषाभित्र रहेको माधुर्यको मिठास संस्कृतवाङ्मयभित्र प्रवेश गरेर नै थाहा पाउन सकिन्छ। संस्कृत भाषाको माधुर्यमा पाश्चात्यहरू पनि मुग्ध भएका छन्। होरेस् हेम्यान् उइलसन् साहेबले भनेका छन्-

*नजाने विद्यते किं तन्माधुर्यमत्रसंस्कृते ।*
*सर्वदैव समुन्मत्ता येन वैदेशिका वयम् ॥*

अर्को कुरा राष्ट्रभाषाको समृद्धि बढाउनका निमित्त संस्कृतको ज्ञान परमावश्यक छ। संस्कृतभाषामा प्रवेश गर्न सर्वप्रथम व्याकरण नै पढ्नुपर्छ "मुखं व्याकरणं स्मृतम्" किन कि भाषाको मुख (मुहान) व्याकरण हो। संस्कृतव्याकरणमा प्रवेश गर्न सर्वप्रथम लघुसिद्धान्तकौमुदी नै पढ्नु आवश्यक छ भन्ने कुरा धेरै पहिलेदेखि सिद्ध भैसकेको छ। अतः संस्कृतभाषा जान्न खोज्ने पाठक र संस्कृत विषय पढ्ने छात्रहरूको सौविध्यका निमित्त 'लघुसिद्धान्तकौमुदी'मा नेपाली टीकाको अत्यन्त आवश्यकता थियो। यही महसूस गरेर विश्वविद्यालयले यसको नेपाली भाषामा टीका लेख्ने काम प्रा. डा. दुर्गादत्तशर्मालाई सौंपेको हो।

लेखकले यो टीका परिश्रमसाथ लेख्नुभएको छ। यो ग्रन्थ संस्कृतव्याकरणमा सर्वप्रथम प्रवेश गर्ने पाठकहरूलाई व्याकरणको तत्व बुझाउन सक्षम छ। यसबाट जिज्ञासु पाठकवर्गले प्रशस्त लाभ उठाउन सक्ने छन् भन्ने विश्वास गर्दछु। अर्को कुरा टीकाकारले परिशिष्टमा अउण् आदि सूत्रको पारमार्थिक व्याख्यात्मक नन्दिकेश्वरकाशिका नेपालीभावानुवाद सहित राखिदिनुभएकोले पुस्तक अझ आकर्षक बनेको छ। यस्तो ग्रन्थ प्रकाशन हुन लागेकोमा मलाई ज्यादै खुशी लागेको छ।

अन्त्यमा यस प्रकारको उपयोगी ग्रन्थरत्न लेखेर विश्वविद्यालयको सहयोग पुऱ्याउने यस टीकाका लेखक प्रा.डा. दुर्गादत्तशर्मा उपाध्यायलाई धेरै धन्यवाद प्रदान गर्दछु। साथै यसको प्रकाशनमा सहयोग पुऱ्याउने सम्पूर्ण सहयोगी महानुभावहरूप्रति पनि साधुवाद ज्ञापन गर्दछु।

**प्रा. डा. भोजराज पन्त**
*कुलसचिव*
महेन्द्र संस्कृत विश्वविद्यालय

**२०५७ विजयादशमी**

# प्राक्कथन

लघुसिद्धान्तकौमुदी संस्कृतव्याकरणको सर्वप्रथम पढ्नुपर्ने ग्रन्थ हो भन्ने कुरा सर्वविदित छ । यसका हिन्दी, वङ्गाली, मैथिली आदि भाषामा विविध टीकाहरू छन्, पाइन्छन् । नेपाली भाषामा पनि केही समय पहिले लेखिएका १–२ टीका थिए तर ती टीका त्यति सुगम छैनन् र अहिले सुलभ पनि छैनन् । अतः नेपाली मातृभाषा भएका अध्येता अध्यापकहरूका लागि अध्ययन अध्यापनमा सुविधा होस् भन्ने उद्देश्यले नेपाली भाषामा लघुसिद्धान्तकौमुदीको सरल व्याख्या र रूपसिद्धिप्रक्रियासहित भएको एक टीका लेख्नको निमित्त म.सं.वि.बाट २०५४ को आरम्भमा नै मलाई निर्देशन प्राप्त भएको थियो । मैले तत्काल २०५४ वैशाखदेखि नै यो टीका लेख्न शुरू गरी २०५६ सालको विजयादशमीमा समाप्त गरेर म.सं.वि.मा समर्पण गरेको थिएँ । आज पुस्तकाकारमा प्रकाशित हुनलागेकोमा मलाई ज्यादै खुशी लागेको छ ।

यो टीका कस्तो भयो, त्यो कुरा सदसद्विवेकज्ञ विद्वान्हरूबाट नै निर्णय हुनेछ । यो टीका सकेसम्म जिज्ञासु पाठक एवं छात्रहरूलाई सरल तरिकाले विषयवस्तुमा प्रवेश होस् भन्ने उद्देश्य राखेर लेखिएको छ । (यस टीकाको अन्त्यमा सूत्रचतुर्दशीको पारमार्थिक व्याख्या जान्न चाहने पाठकहरूलाई लाभ होस् भन्ने उद्देश्यले उपमन्युकृत तत्त्वविमर्शिनी व्याख्या र नेपालीभावानुवादसहित नन्दीकेश्वरकाशिका समावेश गरिएको छ ।) आरम्भमा प्रकरणहरूको अनुक्रमणिका अन्तमा सूत्रसूची, धातुसूची र वार्तिकसूची अकार आदि वर्णानुक्रमानुसार दिइएको छ । लघुसिद्धान्तकौमुदीभित्रको परिभाषापाठ, गणपाठ, संक्षिप्त लिङ्गानुशासन पनि समावेश गरिएको छ ।

यस टीकाको विशेषताका बारेमा म. सं. वि. का उपकुलपति श्री माधवराज गौतमज्यू एवं शिक्षाध्यक्ष प्रा.डा. बाबुराम पोखेलज्यू तथा कुलसचिव प्रा.डा. भोजराज पन्तज्यूहरूले आ-आफ्नो सम्मतिभित्र लेखिसक्नुभएको छ । यहाँ पुनः लेखिरहनुपर्ने आवश्यकता देख्दिनँ । तर जुनसुकै शास्त्रको पनि आरम्भमा त्यस शास्त्रका प्रवर्तक र व्याख्याताहरूको परिचयमा पाठकको जिज्ञासा हुने हुनाले यस पाणिनीयव्याकरणका प्रवर्तक, व्याख्याता, एवं ग्रन्थकर्ता आचार्यहरूको संक्षिप्त परिचयात्मक विवरण तल प्रस्तुत गरिन्छ ।

## महर्षि पाणिनि

पाणिनीय व्याकरणका प्रवर्तक अथवा निर्माता पाणिनि मुनि हुन् । पञ्जाब प्रान्तको शलातुर नाम भएको ग्राम पाणिनिको जन्मभूमि हो । त्यो शलापुर गाउँ शलातुर, हलाथुर हलाहुर लाहुर लाहोर यी शब्दमा अपभ्रंश हुँदै गएर अहिले "लाहौर" नामले प्रसिद्ध छ । पाणिनिका पिताको नाम शलङ्क र आमाको नाम दाक्षी थियो । पाणिनिको समय कुन थियो भन्नेबारे समालोचकहरूका विभिन्न मत छन् । पाश्चात्य विद्वान् कनिङ्घम महोदय ईसवीय सन्भन्दा तीनसय वर्ष अघि पाणिनिको समय मान्दछन् । अरू कसैले ईसवीय सन् भन्दा हजारवर्ष पहिले र कसैले ई.सं.भन्दा २५०० वर्ष पहिले पाणिनिको समय मानेका छन् । विचारपूर्वक समीक्षा गर्ने

समीक्षा गरेर जनमेजय राजाको राज्यकाल, कलिको चौथो शताब्दी अर्थात् ईसवीयसन्भन्दा २७०० वर्षपूर्व पाणिनिको समय सिद्ध गरेका छन् ।

शब्दशास्त्रार्थी पाणिनिले प्रयागराजतीर्थमा अक्षयवटको फेदमा बसेर भगवान् शङ्करको कठोर तपस्या गरे । तपस्याबाट प्रसन्न भगवान् शङ्करले उनलाई वर्णसमाम्नाय अर्थात् सूत्रचतुर्दशी दिनुभयो । त्यसैको आधारमा उनले अष्टाध्यायीसूत्रपाठ, धातुपाठ, गणपाठ लिङ्गानुशासन आदि साङ्गोपाङ्ग व्याकरणशास्त्रको रचना गरे । पाणिनीय व्याकरणको मुख्यग्रन्थ अष्टाध्यायीसूत्रपाठ हो । यसमा ३९७८ सूत्रहरू छन् । पाणिनिद्वारा रचना गरिएको हुनाले यो पाणिनीयव्याकरण हो । मूल स्रोतको रूपमा रहेका चौध सूत्र महेश्वरबाट प्राप्त भएका हुनाले यसलाई माहेश्वर व्याकरण पनि भन्दछन् ।

## कात्यायनमुनि

कात्यायन मुनि पाणिनिभन्दा करीव ६०० वर्षपछि जन्मेका थिए भनेर विद्वान्हरूले सिद्ध गरेका छन् । यिनको अर्को नाम एकश्रुतिधर थियो भन्ने कुरा र यिनी नन्दराजाका समयमा भएका थिए भन्ने कुरा कथासरित्सागरबाट बुझिन्छ । यिनले पाणिनिले बनाएको “अष्टाध्यायीसूत्रपाठ”मा अपूर्ण भएका विषयलाई पूर्ण गर्न वार्तिकग्रन्थको रचना गरेका छन् । कात्यायन मुनिका वार्तिकहरू नहुने हो भने पाणिनीयव्याकरण केही मात्रामा अपूर्ण नै रहन्छ ।

## भगवान् पतञ्जलि

कालान्तरमा यो पाणिनीयव्याकरणको अध्ययन अध्यापनमा न्यूनता आएको देखेर भगवान् शङ्करकै प्रेरणाले यसको विशद व्याख्या एवं प्रचारप्रसार गर्नको निमित्त भगवान् शेषनाग पतञ्जलिको रूपमा अवतीर्ण हुनुभयो । भगवान् पतञ्जलिको जन्म ईसवीय सन्भन्दा चारसय वर्षअघि भएको थियो भन्ने विद्वान्हरूको भनाइ छ । उहाँकी आमाको नाम गोणिका हो जन्मस्थल गोनर्द देश हो । त्यो गोनर्द देश काश्मीरमा छ । कसै कसैले अवधप्रान्तमा गोण्डा नामले प्रसिद्ध नगर नै गोनर्द देश हो भन्दछन् । भगवान् पतञ्जलिले पाणिनीयव्याकरणका सबै सूत्रहरूको व्याख्या साङ्गोपाङ्ग एवं विस्तृत रूपमा गर्नुभएको छ । यो ग्रन्थ पातञ्जल महाभाष्य नामले प्रसिद्ध छ । पातञ्जल महाभाष्य संस्कृतवाङ्मयमा व्याकरणको एक अति महत्वपूर्ण ग्रन्थ हो । यसमा सूत्रको व्याख्यान गर्ने क्रममा उदाहरण दिँदा वेद, वेदान्त, न्याय मीमांसा आदि विविध शास्त्र र लौकिक आचार विचार व्यवहार आदिको पनि समीक्षा भएको छ । अतः यो विविध विषयको विश्लेषण भएको आकर ग्रन्थ मानिन्छ ।

## भट्टोजिदीक्षित आचार्य

भगवान् पतञ्जलिले महाभाष्य रचना गरेपछि पुनः पाणिनीयव्याकरणको प्रचारप्रसार बढ्यो । भर्तृहरि, कैयट, वामनजयादित्य आदि विद्वान्हरूले विवृति र वृत्तिग्रन्थहरू लेखे । ती ग्रन्थहरूमा प्रकरणको सरलता छैन र भाषिक शैलीको दृष्टिले हेर्दा कठिन पनि छन् । अतः व्याकरणतत्त्वजिज्ञासुहरूको निमित्त उपकार होस् भन्ने अभिप्रायले भट्टोजिदीक्षितले सूत्रहरूको प्रकरण मिलाएर केही सरल शैलीमा वृत्ति र उदाहरणसहित “वैयाकरणसिद्धान्तकौमुदी” बनाए ।

साथै त्यसको व्याख्यानग्रन्थ प्रौढमनोरमा पनि लेखे । उनले शब्दकौस्तुभ आदि व्याकरणशास्त्रका अरू ग्रन्थ पनि रचना गरेका छन् ।

उनको जन्मसमय वि.सं. १६ औं शताब्दी मानिएको छ । उनका पिताको नाम लक्ष्मीधर थियो । जन्मस्थल पञ्चद्राविडान्तर्गत सप्तगोदावरीप्रदेश हो ।

## वरदराज आचार्य

वरदराज आचार्य भट्टोजिदीक्षितका शिष्य हुनाले उनको जन्मसमय पनि वि.सं. सोह्रौं शताब्दी मानिएको छ । यिनका पिताको नाम दुर्गातनय थियो । यिनी दाक्षिणात्य ब्राह्मण हुन् ।

भट्टोजिदीक्षितको वैयाकरणसिद्धान्तकौमुदी व्याकरणशास्त्रका सबै सिद्धान्तको सङ्ग्रहस्वरूप ग्रन्थ हुनाले अति विशाल र फक्किकाहरूको सम्पर्कले गर्दा जटिल पनि भएकोले व्याकरणमा सर्वप्रथम प्रवेश गर्ने सुकुमारमति बालकहरूको निमित्त अत्यन्त कठिन भयो । यसको अधिक प्रचार हुन सकेन । अतः भट्टोजिदीक्षितका प्रियशिष्य वरदराज आचार्यले सुकुमारमति बालकहरू पनि व्याकरण विषयमा सजिलै प्रवेश गर्न सकून् र आफ्ना गुरुद्वारा रचना गरिएको प्रक्रियागत रूपमा अध्ययन गर्ने नव्यव्याकरणको सम्प्रदाय अघि बढ्दै जाओस् भन्ने उद्देश्य लिएर वैयाकरणसिद्धान्तकौमुदीमा रहेका फक्किका आदि जटिल विषयहरू हटाई अत्युपयोगी सरल सार भागलाई मात्र लिएर यो लघुसिद्धान्तकौमुदी रचना गरेका हुन् । यो लघुसिद्धान्तकौमुदी देख्दा सानो भए पनि यसले सिद्धान्तकौमुदीमा भएका विषयवस्तुहरूलाई समेटेको छ । यो ग्रन्थको अध्ययन गरेपछि वैयाकरणसिद्धान्तकौमुदी पढ्न सुगम हुन्छ ।

हुन त वरदराज आचार्यले सिद्धान्तकौमुदीमा नभएको आफ्नो मौलिक विषयवस्तु लघुसिद्धान्तकौमुदीमा केही थपेका छैनन् तर उनको सारग्रहणचातुरी र प्रकरणविन्यासपरिपाटी नै यहाँ प्रशंसनीय छ ।

## सारग्रहण

वरदराज आचार्यले लघुसिद्धान्तकौमुदी बनाउँदा वैयाकरणसिद्धान्तकौमुदीमा रहेका सबै प्रकरणहरू समावेश गरेका छन् तर प्रत्येक प्रकरणभित्र रहेका कठिन विषयवस्तुलाई सुकुमारमति बालकहरूले ग्रहण गर्न सक्तैनन्, बुद्धिको परिपक्वता आएपछि मात्र पढ्नेछन् भन्ने अभिप्रायले छोडेका छन् र सरल विषयवस्तु मात्र लिएका छन् । उनले वैयाकरणसिद्धान्तकौमुदीमा रहेका अष्टाध्यायी सूत्रपाठका समग्रसूत्र -३९७८ मध्ये एक तृतीयांशभन्दा पनि कमी जम्मा १२७१ सूत्रमात्र लघुसिद्धान्तकौमुदीमा लिएका छन् । तिङन्तप्रकरणमा पनि धातुपाठमा रहेका लगभग २००० धातुमध्ये जो अत्यन्त प्रसिद्ध छन् त्यस्ता २२२ धातुमात्र लिएका छन् । यसरी सारसङ्ग्रह गर्दा अत्यावश्यक विषयवस्तुको चयन गर्ने परिपाटीमा उनको चातुर्य देखिन्छ ।

## प्रकरणविन्यास

सिद्धान्तकौमुदीमा सुबन्तप्रकरण पछि स्त्रीप्रत्यय, कारक, समास, तद्धित, तिङन्त, कृदन्त, राखिएको छ । लघुकौमुदीमा सुबन्त पछि तिङन्त कृदन्त, कारक, समास, तद्धित, स्त्रीप्रयत्यय राखिएको छ । यसरी प्रकरणको फेरबदल गर्नुमा वैज्ञानिकता देखिन्छ । बालकहरूलाई सुबन्त प्रकरण पढेपछि तिङन्तप्रकरण पढ्नु नै उपयुक्त छ । ("सुप्तिङन्तचयो वाक्यम्" सुबन्त र तिङन्त

प्रकरण पढेपछि तिङन्तप्रकरण पढ्नु नै उपयुक्त छ। ("सुप्तिङन्तचयो वाक्यम्" सुबन्त र तिङन्त पदको समूह वाक्य हो ।) सुबन्त पछि तिङन्त प्रकरण आरम्भ गर्दा अध्येता बालकहरूलाई वाक्य निर्माण गर्न कौतूहल र अभिप्रेरणा जागृत हुन्छ। अध्ययनमा रुचि बढ्दछ। अहं गच्छामि। अहं क्रीडामि। जस्ता वाक्यहरू आफैं बनाउन थाल्दछन्। तिङन्तप्रकरणमा पढिएका धातुहरूदेखि नै कृत्प्रत्यय गरिने हुनाले तिङन्तपछि कृदन्तप्रकरण पढ्न सुगम हुन्छ। तिङ्प्रत्यय र कृत्प्रत्यय कुन अर्थमा विधान गरियो त्यसको आधारमा विभक्ति आउने हुनाले कारक प्रकरण तिङन्त र कृदन्त पछि समावेश गर्दा बुझ्न सजिलो हुन्छ। पदहरूको संक्षेपीकरण नै समास हो। समासमा कुम्भं करोति इत्यादि विग्रह गर्दा तिङन्त, कृदन्त पदको रूप र त्यहाँ राख्ने विभक्ति पनि जान्न आवश्यक हुन्छ। अतः सुबन्त, तिङन्त कृदन्त र कारक पछि समास प्रकरण राख्नु उपयुक्त हुन्छ। सुबन्त, तिङन्त, कृदन्त र समासमा साधिएका सबै शब्दहरूबाट तद्धितप्रत्यय हुने हुनाले यी सबै प्रकरण पछि तद्धितप्रकरण राख्दा अध्येतालाई बुझ्न सजिलो हुन्छ। कृदन्त समास र तद्धितमा गरिएका प्रत्ययकै आधारमा "टिड्ढाणञ्०" आदि सूत्रले ङीप् आदि स्त्रीप्रत्यय हुने हुनाले अन्तमा स्त्रीप्रत्यय प्रकरण राखिएको हो। यसरी विचार गर्दा सिद्धान्तकौमुदीको भन्दा लघुसिद्धान्तकौमुदीको प्रकरणविन्यासपरिपाटी वैज्ञानिक र उपयोगी छ। अतः वरदराज आचार्यले विषयवस्तुमा मौलिकता नथपे पनि सारग्रहण र प्रकरणविन्यासमा गरिएको प्रयास महत्वपूर्ण छ।

वरदराज आचार्यको अर्को कृति मध्यसिद्धान्तकौमुदी हो। यसमा पनि प्रकरणहरू लघुसिद्धान्तकौमुदीका अनुसार नै राखिएका छन्। यसमा वैयाकरणसिद्धान्तकौमुदीको सबै सारभाग लिएका छन्। मध्यसिद्धान्तकौमुदी पढेपछि "वैयाकरणसिद्धान्तकौमुदी" पढ्ने आवश्यकता नै पर्दैन। चलनचल्तीमा आउने शब्दहरू यसबाट सिद्ध हुन्छन्।

लघुसिद्धान्तकौमुदी लेख्दा वरदराजले गुरुकै आज्ञाले लेखेका हुनाले उनले आशीर्वाद पाए। तर मध्यकौमुदी आफ्नै विचारले गुरुको आज्ञा विना नै लेखेका थिए। अतः यो देखेपछि भट्टोजिदीक्षितलाई लाग्यो, "सबैले मध्यसिद्धान्त कौमुदी पढे भने वैयाकरणसिद्धान्तकौमुदी पढ्ने आवश्यकता नै हुँदैन र मेरो ग्रन्थ लोप हुनेछ" यो सोचेर मध्यकौमुदी पढ्नेलाई विघ्न परोस् भन्ने सराप दिए। त्यसैले मध्यसिद्धान्तकौमुदी पढ्न कसैले रुचि गरेनन्। लघुसिद्धान्तकौमुदी पढ्ने प्रचलन व्यापक रूपमा फैलियो भन्ने किंवदन्ती पनि छ।


## कृतज्ञता ज्ञापन

यो टीका लेख्न निर्देशन एवं प्रेरणा दिनु हुने उपकुलपति प्रा. माधवराज गौतम शिक्षाध्यक्ष प्रा.डा. बाबुराम पोखेल, कुलसचिव प्रा.डा. भोजराज पन्त प्रति सम्मानपूर्वक हार्दिक कृतज्ञता समर्पण गर्दछु। यो टीका लेख्दा जुन जुन ग्रन्थहरूको सहयोग लिइयो, ती ग्रन्थकर्ता पूर्वज विद्वान्हरूप्रति साभार कृतज्ञता व्यक्त गर्दछु। सन्देह लागेको ठाउँमा सोधेका प्रश्नहरू समाधान गरिदिनुहुने राजकीय-प्रज्ञा प्रतिष्ठानका प्राज्ञ सदस्य व्याकरणशास्त्रका प्रतिष्ठित विद्वान् डा. टीकाराम पन्थीज्यूप्रति सादर हार्दिक कृतज्ञता ज्ञापन गर्दछु। यस पुस्तकको प्रारूप शोधन कार्यमा सहयोग गर्नुहुने उप प्रा. भीम प्रसाद कण्डेलप्रति सस्नेह धन्यवाद प्रकट गर्दछु।


**२०५७ दीपावली**


**डा. दुर्गादत्तशर्मा उपाध्याय**

*प्राध्यापक वाल्मीकि विद्यापीठ*

# पुस्तकको भित्री स्वरूपसम्बन्धमा

१. मूलमा सूत्रहरू र वृत्तिका अक्षरको साइज यौटै भए पनि सूत्र र सूत्रसङ्केताङ्क **कालो अक्षर**मा छन् ।

२. मूलमा सूत्रहरूको पछाडिरहेका अङ्कहरूले लघुसिद्धान्तकौमुदीमा रहेका सूत्रहरूको सङ्ख्याक्रम बताउँछन् । सूत्रहरूको अगाडि रहेका अङ्कले अष्टाध्यायीसूत्रपाठको अध्याय पाउ र सूत्रसंख्या बताउँछन् ।

३. वार्तिकको अगाडि कालो अक्षरमा (**वा.**) यस्तो संकेत र गणसूत्रको अगाडि (**ग.सू.**) परिभाषाको अगाडि (प.) यस्तो संकेत राखिएको छ ।

४. जुन सूत्र मूलमा दुईपटक राखिएको छ त्यसको पछाडि पहिलेको सूत्रसंख्या क्रमाङ्कलाई (**सू.अ.**) (**सू.सं.**) (**सू.नं.**) यो संकेत दिइएको छ। यी तीनवटै सङ्केत सूत्रसंख्याका बोधक हुन् ।

५. टीकामा अक्षरको साइज मूलकोभन्दा केही सानो छ। जुन सूत्र वा पङ्क्तिको व्याख्यान गर्नु छ टीकामा त्यस सूत्र वा पङ्क्तिको उठान **कालो अक्षर**मा दिइएको छ ।
जस्तै "तस्य लोपः" यो सूत्रको व्याख्यामा **तस्येति**- ।
णादयोऽणाद्यर्थाः यस पक्तिको व्याख्यामा **णादय इति**- ।
प्रयोग सिद्धिप्रक्रियामा पनि पहिले सिद्ध भएको रूपलाई कालो अक्षरमा दिइएको छ र त्यसपछि सामान्य अक्षरमा रूपसिद्धिप्रक्रियाको विवरण गरिएको छ जस्तै- **उपेन्द्र**- उप+इन्द्रः, यस्तो स्थितिमा इत्यादि । व्याख्यानप्रसङ्गमा मूलमा रहेका प्रयोगहरूको सिद्धिप्रक्रिया देखाइसकेपछि यथासंभव अन्य उदाहरणहरू पनि प्रस्तुत गरिएको छ ।

६. सन्धि गर्ने स्थलमा दुईपदको बीचमा, सुबन्तप्रक्रियामा शब्द र स्वादिविभक्तिको बीचमा, तिङन्तमा धातु र तिङ्विभक्तिको बीचमा समास र तद्धितमा शब्द र विभक्तिको बीचमा धन चिह्न '+' दिइएको छ ।

७. कहीं पनि सूत्र र वार्तिकको उद्धरण गरेका ठाउँमा डब्बल उद्धरण चिह्न दिइएको छ। प्रयोगमा एकसरो उद्धरण चिह्न दिइएको छ। जस्तै 'देव+ऐश्वर्यम्' यस्तो स्थितिमा "आद् गुणः" ले गुण पायो त्यसलाई बाधेर... इत्यादि ।

८. उद्धरण गरिने सूत्र वार्तिक वा परिभाषा अपूर्ण भएमा त्यसको साम्नेमा शून्य चिन्ह '**०**' दिइएको छ ।

९. तिङन्त प्रकरणमा सेट् अनिट् सकर्मक अकर्मक धातु छुटचाउन सजिलो होस् भन्ने उद्देश्यले धातुको अर्थ दिएपछि कोष्ठकभित्र (सेट् अकर्मक) (सेट् सकर्मक) (अनिट् अकर्मक) (अनिट् सकर्मक) यसरी निर्देशन गरिएको छ ।

१०. धातुहरूलाई **कालो अक्षर**मा दिइएको छ ।

११. टिप्पणीको अनुक्रमाङ्क शुरूदेखि अन्तसम्म क्रमैसँग छ ।

## शैलीपरिचय

१. आदेश विधान गर्ने स्थलमा षष्ठ्यन्तपदको अर्थ गर्दा जसको आदेश हो त्यसका स्थानमा भनिएको छ भने आगम विधान गर्ने स्थलमा षष्ठ्यन्तपदको अर्थ गर्दा जसको आगम हो त्यसको मात्र भनिएको छ ।

कही कहीं वृत्तिमा नै आदेश विधान गर्ने स्थलमा पनि षष्ठ्यन्तपद नराखेर प्रथमान्त पद राखिएको छ भने त्यहाँ वृत्ति अनुसार नै अर्थ गरिएको छ । जस्तै "ऋत्यकः" यो सूत्रको वृत्ति "ऋति परे पदान्ता अकः प्राग्वद्वा" यस्तो छ । यहाँ 'पदान्त अक् ह्रस्व विकल्पले होऊन्' यस्तो अर्थ गरिएको छ ।

२. लोप र लुक्, श्लु, लुप् आदेश भए पनि प्राचीन अध्ययन शैलीलाई अनुसरण गरेर षष्ठ्यन्तपदको अर्थ त्यसको लोप होस्, लुक् होस्, श्लु होस्, लुप् होस् भनिएको छ त्यसका स्थानमा भनिएको छैन ।

३. प्रयोगसिद्धि गर्दा प्रायः त्यस प्रयोगमा लाग्ने सबै सूत्रहरूको व्याख्या गरेपछि प्रयोगसिद्धि प्रक्रिया देखाइएकोछ । कहीं कहीं सूत्रहरूको व्याख्या र प्रयोगसिद्धि प्रक्रिया सँगसँगै पनि दिइएको छ ।

४. समासमा 'समर्थेन सह' को कहीं समर्थसँग र कहीं समर्थकासाथ भनिएको छ यी दुवै भनाइको यौटै अर्थ हो भन्ने सम्झनुपर्दछ ।

## सङ्केत-सूची

| | | |
|---|---|---|
| सि.कौ | = | सिद्धान्तकौमुदी |
| प्र.प्र. | = | प्रथम पुरुष |
| म.पु. | = | मध्यम पुरुष |
| उ.पु. | = | उत्तम पुरुष |
| आ. | = | आत्मनेपद |
| पर. | = | परस्मैपद |
| आ.लि.आ. | = | आशीर्लिङ् आत्मनेपद |
| वि.लि.आ. | = | विधिलिङ् आत्मनेपद |
| आ.लि.पर. | = | आशिर्लिङ् परस्मैपद |
| वि.लि.पर. | = | विधिलिङ् परस्मैपद |
| (वा.) | = | वार्तिक |
| (प.) | = | परिभाषा |
| (ग.सू.) | = | गणसूत्र इत्यादि । |

\- टीकाकार

# समर्पणम्

त्वत्कृपामृतसंसिक्ता लतेव मम धीरियम् ।
दिष्ट्याद्य लघुकौमुद्या व्याख्यापुष्पमजीजनत् ॥
तस्मात्त्वदीयमेवेदं वस्तु तुभ्यं समर्पये ।
नतमौलिरहं भक्त्या श्रीमातर्ललिताम्बिके ?

# क्षमापनम्

अबोधानवधानाभ्यां स्यादत्र स्खलनं यदि ।
तत्र सत्सु क्षमां याचे सादरं विहिताञ्जलिः ॥
टङ्कणे प्रारूपशुद्धौ मुद्रणे वा प्रमादतः ।
स्थिता दोषा अपि क्षम्याः संशोध्याश्च सुधीवरैः ॥

# लघुसिद्धान्तकौमुदीस्थविषयाणामनुक्रमः


| विषयाः | पृष्ठाङ्का |
|---|---|
| १-संज्ञाप्रकरणम् | ... २ |
| २-अच्सन्धिप्रकरणम् | ... १७ |
| ३-हल्सन्धिप्रकरणम् | ... ४४ |
| ४-विसर्गसन्धिप्रकरणम् | ... ६५ |
| ५-अजन्तपुँलिङ्गप्रकरणम् | ... ७३ |
| ६-अजन्तस्त्रीलिङ्गप्रकरणम् | ... १२८ |
| ७-अजन्तनपुंसकलिङ्गप्रकरणम् | ... १४४ |
| ८-हलन्तपुँलिङ्गप्रकरणम् | ... १५७ |
| ९-हलन्तस्त्रीलिङ्गप्रकरणम् | ... २२५ |
| १०-हलन्तनपुंसकलिङ्गप्रकरणम् | ... २३५ |
| ११-अव्ययप्रकरणम् | ... २४७ |
| १२-भ्वादिगणप्रकरणम् | ... २५३ |
| १३-अदादिगणप्रकरणम् | ... ३५२ |
| १४-जुहोत्यादिगणप्रकरणम् | ... ३९२ |
| १५-दिवादिगणप्रकरणम् | ... ४१५ |
| १६-स्वादिगणप्रकरणम् | ... ४३३ |
| १७-तुदादिगणप्रकरणम् | ... ४४० |
| १८-रुधादिगणप्रकरणम् | ... ४७२ |
| १९-तनादिगणप्रकरणम् | ... ४८६ |
| २०-क्र्यादिगणप्रकरणम् | ... ४९६ |
| २१-चुरादिगणप्रकरणम् | ... ५१२ |
| २२-ण्यन्तप्रक्रिया | ... ५१६ |

| विषयाः | पृष्ठाङ्का |
|---|---|
| २३-सन्नन्तप्रक्रिया | ... ५१९ |
| २४-यङन्तप्रक्रिया | ... ५२२ |
| २५-यङ्लुक्प्रक्रिया | ... ५२५ |
| २६-नामधातुप्रक्रिया | ... ५२८ |
| २७-कण्ड्वादिप्रक्रिया | ... ५३४ |
| २८-आत्मनेपदप्रक्रिया | ... ५३५ |
| २९-परस्मैपदप्रक्रिया | ... ५४० |
| ३०-भावकर्मप्रक्रिया | ... ५४२ |
| ३१-कर्मकर्तृप्रक्रिया | ... ५५१ |
| ३२-लकारार्थप्रक्रिया | ... ५५२ |
| ३३-कृदन्ते कृत्यप्रक्रिया | ... ५५५ |
| ३४-पूर्वकृदन्तप्रकरणम् | ... ५६१ |
| ३५-उणादिप्रकरणम् | ... ५८१ |
| ३६-उत्तरकृदन्तप्रकरणम् | ... ५८२ |
| ३७-विभक्त्यर्थप्रकरणम् | ... ५९७ |
| ३८-समासप्रकरणम् | ... ६०७ |
| ३९-अव्ययीभावसमासः | ... ६०९ |
| ४०-तत्पुरुषसमासः | ... ६१७ |
| ४१-बहुव्रीहिसमासः | ... ६३४ |
| ४२-द्वन्द्वसमासः | ... ६४३ |
| ४३-समासान्तप्रकरणम् | ... ६४८ |
| ४४-तद्धितप्रकरणम् | ... ६५० |

| विषयाः | पृष्ठाङ्का |
|---|---|
| ४५-अपत्याधिकारप्रकरणम् | ... ६५३ |
| ४६-रक्ताद्यर्थकप्रकरणम् | ... ६६४ |
| ४७-चातुरर्थिकप्रकरणम् | ... ६७१ |
| ४८-शैषिकप्रकरणम् | ... ६७४ |
| ४९-विकारार्थकप्रकरणम् | ... ६८८ |
| ५०-ठगधिकारप्रकरणम् | ... ६९१ |
| ५१-यदधिकारप्रकरणम् | ... ६९५ |
| ५२-छयतोरधिकारप्रकरणम् | ... ६९८ |
| ५३-ठञधिकारप्रकरणम् | ... ७०० |
| ५४-त्वतलोरधिकारप्रकरणम् | ... ७०३ |
| ५५-भवनाद्यर्थकप्रकरणम् | ... ७०८ |
| ५६-मत्वर्थीयप्रकरणम् | ... ७१५ |
| ५७-प्राग्दिशीयप्रकरणम् | ... ७२१ |
| ५८-प्रागिवीयप्रकरणम् | ... ७२७ |

| विषयाः | पृष्ठाङ्का |
|---|---|
| ५९-स्वार्थिकप्रकरणम् | ... ७३५ |
| ६०-स्त्रीप्रत्ययप्रकरणम् | ... ७४१ |
| ६१-टीकाकर्तुः परिचय | ... ७६२ |
| ६२-परिशिष्टम् | ... ७६५ |
| ६३-नन्दिकेश्वरकाशिका | ... ७६७ |
| ६४-सूत्रसूची | ... ७७७ |
| ६५-वार्तिकसूची | ... ७९५ |
| ६६-धातुसूची | ... ७९९ |
| ६७-लघुसिद्धान्तकौमुद्यां गणेष्वपठितानामुत्तरत्र समुदाहृतानामन्यधातूनां संग्रह | ... ८०३ |
| ६८-परिभाषापाठः | ... ८०५ |
| ६९-गणपाठः | ... ८०६ |
| ७०-लिङ्गानुशासनम् | ... ८०९ |
| ७१-सन्दर्भग्रन्थसूची | ... ८१३ |



❁ श्रीगणेशाय नमः ❁

# लघुसिद्धान्तकौमुदी ।

नेपालीटीकासहिता

## मङ्गलाचरणम्

**नत्वा सरस्वतीं देवीं शुद्धां गुण्यां करोम्यहम् ।**
**पाणिनीयप्रवेशाय लघुसिद्धान्तकौमुदीम् ॥**

---

## टीकाकारकर्तृकं मङ्गलाचरणम्–

गजवदनं गणराजं गिरिशागजयोः सुतं वरदम् ।
वन्देऽहं भयहरणं विघ्नध्वान्तौघमार्तण्डम् ॥१॥
प्रणमज्जनहृत्तापदूरीकरणदक्षिणाम् ।
नमामि तां शिवार्धाङ्गस्वरूपां शैलनन्दिनीम् ॥२॥
यस्याः परादिभेदेन चतुर्धा विद्यते पदम् ।
तां प्रणौमि गिरां देवीमखिलार्थप्रकाशिनीम् ॥३॥
इमां वर्णसमाम्नायरूपां सूत्रचतुर्दशीम् ।
योऽदात् पाणिनये तस्मै महेशाय नमो नमः ॥४॥
योऽस्तोभवर्णविन्यासमध्यायाष्टकविस्तृतम् ।
व्यधाद् व्याकरणं कृत्स्नं तस्मै पाणिनये नमः ॥५॥
विधाय वार्तिकान्येतच्छास्त्रं येन प्रपूरितम् ।
स्फीतवाग्विभवो वन्द्यः सैष कात्यायनो मुनिः ॥६॥
विचिकित्साऽऽमयध्वंसि भाष्यामृतमहौषधम् ।
येनोद्गीर्णं स जयतात्फणिराजः पतञ्जलिः ॥७॥
प्रणम्य पितरावार्यानाचार्यानखिलानपि ।
लघुसिद्धान्तकौमुद्याष्टीकामेतां करोम्यहम् ॥८॥

ग्रन्थकार वरदराज आचार्यले "समाप्तिकामो मङ्गलमाचरेत्" यो शिष्टानुशासन र "मङ्गलादीनि मङ्गलमध्यानि मङ्गलान्तानि च शास्त्राणि प्रथन्ते" इत्यादि महाभाष्यकारको उक्तिलाई स्मरण गर्दै ग्रन्थको निर्विघ्नपरिसमाप्ति, एवं ग्रन्थको प्रसिद्धि होस् भन्ने उद्देश्यले आरम्भमा विद्याकी अधिष्ठात्री देवी सरस्वतीको नमस्कारस्वरूप मङ्गलाचरण गर्नुहुन्छ ।

मङ्गलाचरण गर्दा सरस्वतीको पूजा ग्रन्थबाहिर नै गरेर अनि ग्रन्थको आरम्भ गरे पनि हुन्थ्यो, तर मङ्गलाचरण गर्ने परम्परा शिष्यहरूमा निरन्तर रहिरहोस् भन्ने अभिप्रायले ग्रन्थको

## अथ संज्ञाप्रकरणम्

अइउण् १ । ऋलृक् २ । एओङ् ३ । ऐऔच् ४ । हयवरट् ५ । लण् ६ । ञमङणनम् ७ । झभञ् ८ । घढधष् ९ । जबगडदश् १० । खफछठथचटतव् ११ । कपय् १२ । शषसर् १३ । हल् १४ ॥

---

आरम्भमा नै लेखिएको हो । यस्तै अरू ग्रन्थहरूमा पनि आरम्भमा मङ्गलाचरण गरेको पाइन्छ ।

**नत्वेति- अन्वयः-** अहम्, शुद्धाम्, गुण्याम्, सरस्वतीम्, देवीम्, नत्वा, पाणिनीयप्रवेशाय, लघुसिद्धान्तकौमुदीम्, करोमि ।

यहाँ 'अहम्' यो कर्तृपद हो, 'करोमि' प्रधान क्रियापद हो । 'नत्वा' यो गौण क्रिया हो । 'सरस्वतीम्' गौण क्रियाको कर्म र 'शुद्धाम्' 'गुण्याम्' 'देवीम्' यी तीन शब्द सरस्वतीका विशेषण हुन् 'लघुसिद्धान्तकौमुदीम्' यो प्रधान क्रिया (करोमि)को कर्म हो ।

**समासः-** वरान्ददति इति वरदाः, तेषां राजा **वरदराजः** "राजाहःसखिभ्यष्टच्" इति टच् । पाणिनिना प्रोक्तं शास्त्रं पाणिनीयम् "तेन प्रोक्तम्" इत्यर्थे "वृद्धाच्छः" इति छः । पाणिनीये प्रवेशस्तस्मै **पाणिनीयप्रवेशाय** । सिद्धः अन्तो येषां ते सिद्धान्ताः निर्णीतार्थसाधुशब्दाः, कौ पृथिव्यां मोदन्ते इति कुमुदानि, कुमुदानाम् इयम् कौमुदी चन्द्रिका, सिद्धान्तानां कौमुदीव सिद्धान्तकौमुदी, लघ्वी अत्यल्पा, चासौ सिद्धान्तकौमुदी, लघुसिद्धान्तकौमुदी ताम् **लघुसिद्धान्तकौमुदीम्** ।

**अनुवाद-** म वरदराज आचार्य शुद्धस्वरूप एवं प्रशंसनीयगुणयुक्त सरस्वती देवीलाई नमस्कार गरेर पाणिनीय व्याकरणशास्त्रमा जिज्ञासु छात्रको प्रवेशका निमित्त लघुसिद्धान्तकौमुदी बनाउँछु ।

**अनुबन्धचतुष्टय-**

**सिद्धार्थं सिद्धसम्बन्धं श्रोतुं श्रोता प्रवर्तते ।**
**ग्रन्थादौ तेन वक्तव्यः सम्बन्धः सप्रयोजनः ॥**

प्रयोजन र संबन्ध सिद्ध भएको विषय सुन्न, श्रोता (अधिकारी) प्रवृत्त हुन्छ । त्यसैकारण शास्त्रको आदिमा प्रयोजनसहित संबन्धको पनि उल्लेख गर्नुपर्दछ । यो शिष्टोक्ति संझदै ग्रन्थकारले यस मङ्गलाचरण श्लोकमा विषय, संबन्ध, अधिकारी र प्रयोजनको प्रतिपादन पनि गर्नुभएको छ ।

यो 'लघुसिद्धान्तकौमुदी' व्याकरण शास्त्रको ग्रन्थ हो । यो ग्रन्थ निर्णीतार्थक साधुशब्द प्रतिपादक छ । निर्णीतार्थक-साधुशब्दसमूह यसको प्रतिपाद्य '**विषय**' हो, अतः यस ग्रन्थको र निर्णीतार्थक-साधुशब्दसमूहको प्रतिपाद्य-प्रतिपादकभाव '**सम्बन्ध**' छ । यो कुरा ग्रन्थकारले 'लघुसिद्धान्तकौमुदीम्' यस पदद्वारा अभिव्यक्त गर्नुभएको छ । 'पाणिनीयप्रवेशाय' यस पदद्वारा यसको प्रयोजन अभिव्यक्त हुन्छ । जो कि पाणिनीय व्याकरणशास्त्र अतिगम्भीर एवं विस्तृत छ । बालकहरूलाई शुरूमै गम्भीर विषयमा प्रवेश गर्न गाह्रो हुने हुनाले आफ्ना गुरु भट्टोजिदीक्षितले बनाएको 'सिद्धान्तकौमुदी'को सार भाग ग्रहण गरेर संक्षिप्तरूपमा यो लघुसिद्धान्तकौमुदी वरदराज आचार्यले निर्माण गर्नु भएको हो । अतः यसको अध्ययनबाट जिज्ञासुहरू सजिलैसँग व्याकरणशास्त्रमा प्रवेश गर्न सकून् भन्ने ग्रन्थ निर्माणको '**प्रयोजन**' हो । व्याकरणजिज्ञासु वा संस्कृतभाषाजिज्ञासु

इति माहेश्वराणि सूत्राण्यणादिसंज्ञार्थानि । एषामन्त्या इतः ।

---

छात्रहरू यसका 'अधिकारी' छन् भन्ने कुरा आक्षेपलभ्य छ । अतः यस मङ्गलाचरणश्लोकमा संबन्ध, विषय, अधिकारी र प्रयोजन चारै कुरा अभिव्यक्त भएका छन् ।

पुनश्च पाणिनीय व्याकरणशास्त्रमा किन प्रवेश गर्ने ? यस प्रश्नको उत्तरमा पाणिनीय व्याकरण सबै व्याकरणमा श्रेष्ठ मानिएको छ- **'काणादं पाणिनीयं च सर्वशास्त्रोपकारकम्'** यो उक्ति पनि छ । अतः जिज्ञासुहरू यस ग्रन्थको अध्ययनद्वारा पाणिनीय व्याकरणशास्त्रमा प्रवेश गरेपछि व्याकरणको समग्र रूपमा अध्ययन गरी संस्कृत भाषाको विद्वान् बनून् र विविध संस्कृतग्रन्थभित्र रहेका महत्त्वपूर्ण कुराहरू बुझेर लोकहिताय प्रचार प्रसार गरून् । सबै मानवलाई संस्कृतग्रन्थहरूबाट हुने लाभ हुन सकोस् । यो ग्रन्थकाराभीप्सित 'प्रयोजनको पनि प्रयोजन' यही मङ्गलाचरणपद्यको उत्तरार्धबाट ध्वनित हुन्छ ।

**अब संज्ञा प्रकरण आरम्भ गरिन्छ**

**अइउण् इति-** अइउण् आदि चौध सूत्रलाई माहेश्वर सूत्र भनिन्छ ।

**इतीति-** महेश्वरको[1] वरप्रसादबाट पाणिनिले पाइएका यी १४ सूत्र अण् आदि संज्ञा अर्थात् प्रत्याहारका निमित्त छन् । 'प्रत्याह्रियन्ते संक्षिप्यन्ते वर्णा यत्र स प्रत्याहारः' यो व्युत्पत्ति अनुसार वर्णसंक्षेपीकरण प्रत्याहार हुन्छ । अनि वर्णसमुदायको संक्षेपीकरण पनि प्रत्याहार हुन्छ ।

**वर्णसंक्षेपीकरण, जस्तै-** अण् भन्नाले अ, इ, उ, यी तीनवर्ण बुझिन्छन् । अतः 'अण्' प्रत्याहारमा अ, इ, उ, तीन वर्णको संक्षेपीकरण भयो । यस्तै- अच्, अट् आदि प्रत्याहारमा पनि ती ती वर्णहरुको संक्षेपीकरण हुन्छ ।

**वर्ण-समुदायसंक्षेपीकरण, जस्तै-** सुट् भन्नाले सु, औ, जस्, अम्, औट् यी पाँचवटा वर्णसमुदाय बुझिन्छन् । अतः सुट् प्रत्याहारमा सु, औ, जस्, अम्, औट्, यी पाँचवटा वर्णसमुदायको संक्षेपीकरण भयो । यस्तै सुप्, तिङ् आदि प्रत्याहारमा पनि ती ती वर्ण-समुदायको संक्षेपीकरण हुन्छ ।

**एषामन्त्येति-** यी १४ सूत्रका अन्त्यमा रहेका ण्, क्, ङ्, च्, ट्, ण्, म्, ञ्, प्, श्, व्, य्,र्,

---

१ पहिले कुनै समयमा सनक, सनन्दन, सनातन, सनत्कुमार यी चार ऋषिहरू ज्ञानप्राप्तिको इच्छाले प्रयागराजतीर्थमा अक्षयवटको समीपमा बसेर तपस्या गरेका थिए । शब्दशास्त्रको इच्छा गर्ने पाणिनिले पनि त्यहीं तपस्या गरेका थिए । सनकादि र पाणिनिको तपस्याबाट प्रसन्न भगवान् शङ्करले ताण्डवनृत्यमुद्रामा प्रकट भएर उनीहरूलाई दर्शन दिनुभयो । भगवान् शङ्करले नृत्यको अन्तमा १४ पटक डमरू बजाउनुभयो, जसबाट श्रोता सनकादि र पाणिनिलाई १४ सूत्रको स्मरण भयो । त्यसैको आधारमा पाणिनिले ४२ प्रत्याहार कल्पना गरी अष्टाध्यायी सूत्रपाठ, धातुपाठ, गणपाठ, लिङ्गानुशासनसहित व्याकरणशास्त्रको रचना गरे । सनकादिहरूलाई यी १४ सूत्रको पारमार्थिक व्याख्या भगवान् शङ्करको आज्ञाले नन्दिकेश्वरले गरिदिनुभयो । सो ग्रन्थ नन्दिकेश्वरकाशिका नामले प्रसिद्ध छ । त्यसमा सूत्रचतुर्दशीव्याख्यात्मक २७ श्लोक (कारिका) छन् । दिग्दर्शनका निमित्त आरम्भको एक श्लोक यहाँ उद्धृत गरिन्छ ।

नृत्तावसाने नटराजराजो ननाद ढक्कां नवपञ्चवारम् ॥<br>
उद्धर्तुकामः सनकादिसिद्धानेतद् विमर्शे शिवसूत्रजालम् ॥१॥

त्यसपछिका कारिकाहरूमा "अइउण्" आदि १४ सूत्रको पारमार्थिक व्याख्या छ । नन्दिकेश्वरबाट त्यो व्याख्या सुनेपछि सनकादि ऋषिहरूलाई परमार्थज्ञान प्राप्त भयो भन्ने कथा **लघुत्रिमुनिकल्पतरु**मा उल्लिखित छ । त्यो नन्दिकेश्वरकाशिका यहाँ परिशिष्टमा दिइएको छ ।

हकारादिष्वकार उच्चारणार्थः । लण्मध्ये त्वित्संज्ञकः ॥

**१.हलन्त्यम् १ । ३ । ३ ॥**

उपदेशेऽन्त्यं हलित्स्यात् । उपदेश आद्योच्चारणम् ।

---

ल्, यी १४ वर्ण इत्संज्ञाका निमित्त छन् ।

**हकारादीति-** हकारादि वर्णहरूमा पढिएको अकार उच्चारणका निमित्त छ । हयवरट् आदि सबै सूत्रमा ह,य,व,र आदि अक्षरसँग अकार जोडिएको छ, त्यो उच्चारण गर्न सजिलो होस् भनेर मात्र जोडिएको हो । किनकि ह्, य्, व्,र् यस्ता व्यञ्जन वर्णको उच्चारण गर्न गाह्रो हुने हुनाले [२] आद्यस्वर अकार जोडिएको हो ।

**लणमध्य इति-** लण्सूत्रका बीचमा पढिएको अकार त इत्संज्ञाका निमित्त छ । 'र'प्रत्याहार सिद्ध गर्नको निमित्त त्यसको इत्संज्ञा हुन्छ । 'र' प्रत्याहार साध्ने प्रक्रिया "उपदेशेऽजनुनासिक इत्" यस सूत्रको व्याख्यानमा बताइनेछ ।

**हलन्त्यमिति-** यो सूत्रमा **हल्** यो प्रथमान्त पद हो । **अन्त्यम्** यो पनि प्रथमान्तपद हो । यो सूत्र दुई पद भएको छ अर्थात् यो सूत्रमा दुई पद छन् । 'हल्, प्रथमान्तम्, अन्त्यम्, प्रथमान्तम्' द्विपदमिदं सूत्रम् यसरी पदच्छेद गर्ने अथवा 'हल्, अन्त्यम्, द्विपदमिदं सूत्रम्' यसरी पदच्छेद गर्ने प्राचीनरीति हो । यहाँ द्विपदमिदं सूत्रम्को अर्थ 'यो सूत्र दुई पद भएको छ' हो । त्यसो भन्नु र 'यो सूत्रमा दुई पद छन्' भन्नु कुरा एउटै हो । यो पदच्छेद प्रक्रिया दिग्दर्शनार्थ केवल संज्ञाप्रकरणमा मात्र दिइएको छ । यस्तै प्रकारले 'त्रिपदमिदं सूत्रम्', 'चतुष्पदमिदं सूत्रम्', 'पञ्चपदमिदं सूत्रम्', 'षट्पदमिदं सूत्रम्', 'सप्तपदमिदं सूत्रम्' इत्यादि पदच्छेदरीति सबै सूत्रमा सम्झनु र त्यो त्यो ठाउँमा ऊह गर्नू ।

**उपदेशइति-** उपदेशमा पढिएको अन्त्यको हल्वर्ण इत्संज्ञक होस् ।

**उपदेश आद्योच्चारणमिति-** पाणिनि कात्यायन पतञ्जलि यी तीन मुनिको व्याकरण विषयक प्रथम उच्चारण उपदेश कहिन्छ । निम्नलिखित पद्यमा उपदेशपदबोध्य विषयको संग्रह गरिएको छ ।

"धातुसूत्रगणोणादिवाक्यलिङ्गानुशासनम् ।
आगमप्रत्ययादेशा उपदेशाः प्रकीर्तिताः ॥"

**धातु-** 'भू' 'वा' आदि हुन् । **सूत्र-** "अइउण्" आदि हुन् । **गण-** 'गणपाठ' प्रादि चादि आदि हुन् । **उणादि** प्रसिद्ध छ । **वाक्य-** "आचरेऽवगल्भक्लीबहोडेभ्यः" इत्यादि वार्तिक छन् । **लिङ्गानुशासन** प्रसिद्ध छ । **आगम, प्रत्यय, आदेश** पनि प्रसिद्ध छन्, यिनीहरूलाई उपदेश भनिन्छ ।

**वृत्ति-** यहाँ प्रत्येक सूत्रको अनन्तर वृत्ति दिइएको छ । सूत्रको अर्थ वृत्तिबाट बुझिन्छ । सूत्राधीना वृत्तिः- यो नियम अनुसार सूत्रका अधीनमा वृत्ति हुन्छ, सूत्रको अर्थलाई वृत्तिले अतिक्रमण गर्दैन । अर्थात् वृत्तिमा सूत्रको वास्तविक अभिप्राय हुन्छ । राजशेखरले **'सूत्राणां**

---

२ अरू स्वर नजोडेर आद्यस्वर नै जोडियो । किनकि आद्यस्वर पहिले उपस्थित भयो । "उपस्थितं परित्यज्यानुपस्थितकल्पने मानाभावः" यो न्याय पनि छ ।

सूत्रेष्वदृष्टं पदं सूत्रान्तरादनुवर्तनीयं सर्वत्र ॥

२.**अदर्शनं लोपः** १ ।१ । ६० ॥

प्रसक्तस्यादर्शनं लोपसंज्ञं स्यात् ॥

३.**तस्य लोपः** १ । ३ । ९ ॥

तस्येतो लोपः स्यात् । णादयोऽणाद्यर्थाः ॥

---

**सकलसारविवरणं वृत्तिः**' सूत्रहरूको सम्पूर्ण सारविवरण गर्नुलाई वृत्ति भनिन्छ भनेका छन् ।

"हलन्त्यम्" यस सूत्रमा हल् अन्त्यम् दुई पदमात्र छन्, वृत्तिमा 'उपदेशे'र 'इत्' यी दुई पद "उपदेशेऽजनुनासिक इत्" यो सूत्रबाट अनुवृत्ति गरेर ल्याइएको हो भन्ने बुझाउन 'सूत्रेष्वदृष्टं पदम्' आदि वाक्य द्वारा वृत्तिकारले विवरण गरेका छन् ।

[३]**सूत्रेष्विति**- सूत्रमा नदेखिएको पद अर्को सूत्रबाट अनुवृत्ति गरेर ल्याउनुपर्दछ चाहिएको सबै ठाउँमा । बारंबार उही पदको उच्चारण गर्नु नपरोस् भन्ने अभिप्रायले व्याकरण शास्त्रमा पूर्वसूत्रबाट पछिल्लो सूत्रमा आवश्यक पदको अनुवृत्ति ल्याइन्छ । अतः सबै सूत्रमा "**अष्टाध्यायी सूत्रपाठ**" अनुसार अनुवृत्ति आउने क्रम स्मरण गर्नुपर्दछ भन्ने 'सूत्रेष्वदृष्टं पदम्' इत्यादि पङ्क्तिको आशय हो ।

**अदर्शनमिति**– यो सूत्रमा **अदर्शनम्** यो प्रथमान्त पद हो, **लोपः** यो पनि प्रथमान्त पद हो । यो सूत्रमा दुईपद छन् ।

**प्रसक्तस्येति**– उच्चारण प्राप्त भएका वर्ण अथवा वर्णसमुदायको उच्चारण नहुनु लोपसंज्ञक होस् ।

पाणिनीयव्याकरण शास्त्रानुसार शब्द नित्य मानिएको छ, अतः लोप हुनु भनेको विनाश हुनु होइन । 'विनाश हुनु' भन्दा शब्दमा अनित्यतादोष आउँछ । सो दोष नआओस् भन्ने अभिप्रायले उच्चारण प्राप्त भएकाको उच्चारण नहुनु भनिएको हो ।

**तस्येति**–यो सूत्रमा **तस्य**, यो षष्ठ्यन्त पद हो, **लोपः**, यो प्रथमान्त पद हो । यो सूत्रमा दुईपद छन् ।

**तस्येत इति**– त्यो इत्संज्ञकवर्ण अथवा वर्णसमुदायको लोप होस् । "हलन्त्यम्", "उपदेशेऽजनुनासिक इत्", आदि सूत्रद्वारा जसको इत्संज्ञा हुन्छ, उसको लोप हुन्छ भन्ने, यो सूत्रको अभिप्राय हो ।

**णादय इति**- अइउण् इत्यादि चौधसूत्रका अन्तमा रहेका खुट्टो काटेका 'ण्' आदि वर्णहरू, 'अण्' आदि प्रत्याहार सिद्ध गर्नका निमित्त छन् । इत्संज्ञा भएका वर्णको "तस्य लोपः" यस सूत्रले लोप गरेर यहाँ प्रयोजन सिद्ध हुँदैन, अन्यत्र हुन्छ । यहाँ अण् आदि प्रत्याहार सिद्ध गर्ने प्रयोजन

---

३ सूत्रहरू छ प्रकारका छन्-

संज्ञासूत्र, परिभाषासूत्र, विधिसूत्र, नियमसूत्र, अतिदेशसूत्र, अधिकारसूत्र ।

"संज्ञा च परिभाषा च विधिर्नियम एव च ।
अतिदेशोऽधिकारश्च षड्विधं सूत्रलक्षणम् ॥"

**४.आदिरन्त्येन सहेता १ । १ । ७१ ॥**

अन्त्येनेता सहित आदिर्मध्यगानां स्वस्य च संज्ञा स्यात् । यथाऽणिति अइउवर्णानां संज्ञा । एवमच्हल्अलित्यादयः ॥

---

छ । प्रत्याहार सिद्ध गर्ने सूत्र तल दिइन्छ–

**आदिरन्त्येनेति**– यो सूत्रमा **आदिः**, प्रथमान्त पद हो, **अन्त्येन** तृतीयान्त पद हो, **सह** यो अव्यय पद हो, **इता** तृतीयान्त पद हो । यो सूत्रमा चारपद छन् ।

**अन्त्येनेति**– अन्त्यका इत्संज्ञक वर्णले सँग पढिएको आदिवर्ण अथवा वर्णसमुदाय (अण्, सुट्, तिङ् आदि) माझकाको र आफ्नो आदिको पनि बोधक होस् ।

**यथेति**– जस्तै "अण्" यो अ,इ,उ, यी वर्णहरूको संज्ञा जानियो, यस्तै प्रकारले 'अच्', 'हल्', 'अल्', आदि संज्ञा (प्रत्याहार) जान्नू । "आदिरन्त्येन सहेता" यस सूत्रद्वारा प्रत्याहार सिद्ध हुन्छन् । अण् आदि संज्ञा नै प्रत्याहार हुन् ।

**अण् प्रत्याहार सिद्ध गर्ने रीति**– अण् प्रत्याहार सिद्ध गर्दा "अइउण्" यहाँ "अइउण्"का अन्तमा रहेका णकारको "हलन्त्यम्" ले इत्संज्ञा भयो अनि "आदिरन्त्येन सहेता" यो सूत्र लगाएर अन्त्यको इत्संज्ञक वर्ण णकारले सहित आदिवर्ण भयो, 'अण्' अण्भन्दा 'अ'र 'ण्' को माझका 'इ', 'उ' यी दुई वर्ण र आफ्नो (अण्को) आदिवर्ण 'अ' यी तीन वर्णको संज्ञा भयो, 'अण्' भन्नाले अ,इ,उ, यी तीन अक्षर बुझिए ।

**अच् प्रत्याहार**– यस्तै किसिमले "ऐऔच्" यो सूत्रमा अन्त्यको इत् 'च्' सँग 'अ' लाई लिंदा भयो 'अच्', अच् भन्नाले अ, इ, उ, ऋ, लृ, ए, ओ, ऐ, औ, यति ९ वर्ण बुझिए ।

प्रत्याहारमा इत्संज्ञक वर्णको ग्रहण हुँदैन । जस्तै अच् प्रत्याहारको बीचमा र अन्तमा रहेका हल् वर्ण- ण्, क्, ङ्, च् को ग्रहण हुँदैन । अण्, अच् जस्तै 'हल्' भन्नाले सम्पूर्ण व्यञ्जन वर्ण र 'अल्' भन्नाले स्वर वर्ण, व्यञ्जन वर्ण सबै अक्षर बुझिन्छन् । "अइउण्", "ऋलृक्" आदि १४ सूत्रलाई वर्णसमाम्नाय भनिन्छ ।

**वर्णसमाम्नायको उपयोग**– प्रत्याहार बनाउनको निमित्त नै वर्णसमाम्नायको उपयोग पाणिनिले व्याकरणशास्त्रमा गर्नुभएको छ । वर्णसमाम्नायबाट ४४ प्रत्याहार बन्दछन् । व्याकरण शास्त्रमा ४४ प्रत्याहारको उपयोग भएको छ । हुन त अरू प्रत्याहार पनि बन्न सक्छन्, तर अरूको उपयोग व्याकरण शास्त्रमा भएको छैन ।

**प्रत्याहारको निरूपण**– यी प्रत्याहारहरूको विवरण काशिकाकारले यौटै पद्यमा यसरी गर्नुभएको छ–

**"एकस्मान् ङञणवटा, द्वाभ्यां षस्त्रिभ्य एव कणमाः स्युः ।**
**ज्ञेयौ चयौ चतुर्भ्यो, रः पञ्चभ्यः, शलौ षड्भ्यः ॥"**

ङकार, ञकार, पहिलो णकार, वकार, टकार यी पाँचवर्ण अन्तमा हुने एक-एक गरेर पाँचवटा (५ × १=५) प्रत्याहार छन् । मूर्धन्य षकार अन्तमा हुने दुई (२ × १=२) प्रत्याहार छन् । ककार, पछिल्लो णकार, मकार यी तीनवर्ण अन्तमा हुने प्रत्येक तीन-तीन (३×३=९) प्रत्याहार

छन्। चकार र यकार यी दुईवर्ण अन्तमा हुने प्रत्येक चार-चार (४×२=८) प्रत्याहार छन्।

रेफान्त प्रत्याहार पाँचवटा (५×१=५) छन्।

तालव्य शकार र लकार यी दुई वर्ण अन्तमा हुने प्रत्येक छ-छ वटा (६×२=१२) प्रत्याहार छन्।

यी ४१ प्रत्याहार अनि "चयो द्वितीयाः शरि" यस वार्तिकमा प्रयुक्त 'चय्'प्रत्याहार र "उरण् रपरः" यस सूत्रमा प्रयुक्त 'र'प्रत्याहार, "ञमन्ताड्डः" यो औणदिक सूत्रमा प्रयुक्त 'ञम्' प्रत्याहार समेत व्याकरणशास्त्रमा ४४ प्रत्याहारको उपयोग भएको छ।

प्रत्याहार, प्रत्याहार ग्राह्यवर्णहरू र त्यसको उपयोग हुने उदाहरणसूत्रहरूको दिग्दर्शन तलको तालिकामा दिइन्छ–

| प्रत्याहार | | प्रत्याहारग्राह्यवर्ण | उदाहरणसूत्रको दिग्दर्शन |
|---|---|---|---|
| १. | एङ् – | ए ओ। | "अदेङ् गुणः" |
| २. | यञ् – | य व र ल ञ म ङ ण न झ भ। | "अतो दीर्घो यञि" |
| ३. | अण् – | अ इ उ। | "उरण् रपरः" |
| ४. | छव् – | छ ठ थ च ट त। | "नश्छव्यप्रशान्" |
| ५. | अट् – | अ इ उ ऋ ऌ ए ओ ऐ औ ह य व र। | "अट्कुप्वाङ्नुम्०" |
| ६. | झष् – | झ भ घ ढ ध। | "झषस्तथोः०" |
| ७. | भष् – | भ घ ढ ध। | "एकाचो वशो भष्०" |
| ८. | अक् – | अ इ उ ऋ ऌ। | "अकः सवर्णे दीर्घः" |
| ९. | इक् – | इ उ ऋ ऌ। | "इको यणचि" |
| १०. | उक् – | उ ऋ ऌ। | "उगिदचां०" |
| ११. | अण् - | अ इ उ ऋ ऌ ए ओ ऐ औ ह य व र ल | "अणुदित्सवर्णस्य०" |
| १२. | इण् – | इ उ ऋ ऌ ए ओ ऐ औ ह य व र ल। | "इणः षः" |
| १३. | यण् – | य व र ल। | "इको यणचि" |
| १४. | अम्– | अ इ उ ऋ ऌ ए ओ ऐ औ ह य व र ल ञ म ङ ण न। | "पुमः खय्यम्परे" |
| १५. | यम्– | य व र ल ञ म ङ ण न। | "हलो यमां यमि०" |
| १६. | ङम्– | ङ ण न। | "ङमो ह्रस्वादचि०" |
| १७. | अच्– | अ इ उ ऋ ऌ ए ओ ऐ औ। | "इको यणचि" |
| १८. | इच्– | इ उ ऋ ऌ ए ओ ऐ औ। | "नादिचि" |
| १९. | एच्– | ए ओ ऐ औ। | "एचोऽयवायावः" |
| २०. | ऐच्– | ऐ औ। | "वृद्धिरादैच्" |
| २१. | यय्– | य व र ल ञ म ङ ण न झ भ घ ढ ध ज ब ग ड द ख फ छ ठ थ च ट त क प। | "अनुस्वारस्य ययि०" |
| २२. | मय्– | म ङ ण न झ भ घ ढ ध ज ब ग ड द ख फ छ ठ थ च ट त क प। | "मय उञो वो वा" |

| | | | |
|---|---|---|---|
| २३. | झय्– | झ भ घ ढ ध ज ब ग ड द ख फ छ ठ थ च ट त क प। | "झयो होऽन्यतर०" |
| २४. | खय्– | ख फ छ ठ थ च ट त क प। | "पुमः खय्यम्परे" |
| २५. | यर्– | य व र ल ञ म ङ ण न झ भ घ ढ ध ज ब ग ड द ख फ छ ठ थ च ट त क प श ष स। | "यरोऽनुनासिके०" |
| २६. | झर्– | झ भ घ ढ ध ज ब ग ड द ख फ छ ठ थ च ट त क प श ष स। | "झरो झरि सवर्णे" |
| २७. | खर्– | ख फ छ ठ थ च ट त क प श ष स। | "खरि च" |
| २८. | चर्– | च ट त क प श ष स। | "अभ्यासे चर्च" |
| २९. | शर्– | श ष स। | "शरोऽचि" |
| ३०. | अश्– | अ इ उ ऋ लृ ए ओ ऐ औ ह य व र ल ञ म ङ ण न झ भ घ ढ ध ज ब ग ड द। | "भोभगोअघो०" |
| ३१. | हश्– | ह य व र ल ञ म ङ ण न झ भ घ ढ ध ज ब ग ड द। | "हशि च" |
| ३२. | वश्– | व र ल ञ म ङ ण न झ भ घ ढ ध ज ब ग ड द। | "नेड् वशि कृति" |
| ३३. | झश्– | झ भ घ ढ ध ज ब ग ड द। | "झलां जश् झशि" |
| ३४. | जश्– | ज ब ग ड द। | "झलां जश् झशि" |
| ३५. | बश्– | ब ग ड द। | "एकाचो बशो भष्" |
| ३६. | अल्– | अ इ उ ऋ लृ ए ओ ऐ औ ह य व र ल ञ म ङ ण न झ भ घ ढ ध ज ब ग ड द ख फ छ ठ थ च ट त क प श ष स ह। | "अलोऽन्त्यस्य" |
| ३७. | हल्– | ह य व र ल ञ म ङ ण न झ भ घ ढ ध ज ब ग ड द ख फ छ ठ थ च ट त क प श ष स ह। | "हलन्त्यम्" |
| ३८. | वल्– | व र ल ञ म ङ ण न झ भ घ ढ ध ज ब ग ड द ख फ छ ठ थ च ट त क प श ष स ह। | "लोपो व्योर्वलि" |
| ३९. | रल्– | र ल ञ म ङ ण न झ भ घ ढ ध ज ब ग ड द ख फ छ ट थ च ट त क प श ष स ह। | "रलो व्युपधाद्धलादेः०" |
| ४०. | झल्– | झ भ घ ढ ध ज ब ग ड द ख फ छ ठ थ च ट त क प श ष स ह। | "झलां जश् झशि" |
| ४१. | शल्– | श ष स ह। | "शल इगुपधादनिटः०" |
| ४२ | र– | र ल। | "उरण् रपरः" |
| ४३. | चय्– | च ट त क प। | "चयो द्वितीयाः शरि०" |
| ४४ | ञम्– | ञ म ङ ण न। | "ञमन्ताड्डः" |

**५. ऊकालोऽज्झ्रस्वदीर्घप्लुतः १ । २ । २७ ॥**

उश्च ऊश्च ऊ३श्च वः, वां काल इव कालो यस्य सोऽच् क्रमाद् ह्रस्वदीर्घप्लुतसंज्ञः स्यात् । स प्रत्येकमुदात्तादिभेदेन त्रिधा ।

**६. उच्चैरुदात्तः । १ । २ । २९ ॥**

---

यी प्रत्याहारमध्ये पल्लो णकारबाट बनेको अण् प्रत्याहार "अणुदित्सवर्णस्य०" यो सूत्रमा र, रप्रत्याहार "उरण् रपरः" यो सूत्रमा मात्र प्रयोग भएको छ । चय् प्रत्याहार "चयो द्वितीयाः शरि०" यस वार्तिकमा मात्र प्रयुक्त छ । ञम् प्रत्याहार उणादिमा प्रयुक्त छ । तर अरू प्रत्याहार त धेरै सूत्रमा प्रयोग गरिएका छन् । यहाँ दिग्दर्शनार्थ एक एक सूत्र मात्र उदाहरणमा प्रस्तुत गरिएको हो ।

**ऊ३काल इति**– यो सूत्रमा **ऊ३कालः** प्रथमान्त पद हो, **अच्** प्रथमान्त पद हो, **ह्रस्वदीर्घप्लुतः** यो पनि प्रथमान्त पद हो । यो सूत्रमा तीन पद छन् ।

**उश्चेति**– उ, ऊ,र ऊ३ अर्थात् ह्रस्व उकार, दीर्घ ऊकार, प्लुत ऊ३कार यी तीन उकारको द्वन्द्वसमास गर्दा वः यस्तो रूप हुन्छ । अर्थात् उ+ऊ+ऊ३को दीर्घ भएर ऊ हुन्छ ऊ शब्दको जस्मा वः यस्तो रूप हुन्छ । वाम् यो ऊ शब्दको षष्ठीको बहुवचनको रूप हो ।

**वामिति**- (वाम्) एकमात्रिक उकार, द्विमात्रिक ऊकार, त्रिमात्रिक ऊ३कारको (काल इव कालो यस्य) उच्चारणकालसदृश छ उच्चारणकाल जुन अच्को (स; अच्) त्यो अच् (क्रमाद् ह्रस्वदीर्घप्लुतसंज्ञः स्यात्) क्रमैले ह्रस्व-दीर्घ-प्लुत-संज्ञक होस् ।

यहाँ एकमात्रिक उकारको उच्चारणकाल सदृश उच्चारणकाल भएको अच् भन्नाले, एकमात्रा भएको उकारलाई उच्चारण गर्न जति समय लाग्छ, त्यति समय लाग्ने भन्ने अर्थ हो । त्यस्तै द्विमात्रिक ऊकारको उच्चारणकाल सदृश उच्चारण काल भएको अच् भन्नाले दुई मात्रा भएको ऊकारलाई उच्चारण गर्दा जति समय लाग्छ त्यति समय लाग्ने अच् भन्ने अर्थ हो । अनि त्रिमात्रिक ऊ३कारको उच्चारणकाल सदृश उच्चारण काल भएको अच् भन्नाले तीनमात्रा भएको ऊ३लाई उच्चारण गर्दा जति समय लाग्छ त्यति समय लाग्ने अच् भन्ने अर्थ हो । यहाँ "वां काल इव कालो यस्य" भन्दा अश्वस्य मुखम्, अश्वमुखम्, अश्वमुखमिव मुखं यस्य, यहाँ झैं "**सप्तम्युपमानपूर्वपदस्य बहुव्रीहिर्वाच्यो वा चोत्तरपदलोपश्च**" यो वार्तिकद्वारा उपमानपूर्वपद समास भएको छ । एकमात्रिक स्वर ह्रस्व, द्विमात्रिक स्वर दीर्घ, त्रिमात्रिक स्वर प्लुत भनिन्छ । व्यञ्जनको आधा मात्रा हुन्छ ।

"एकमात्रो भवेद्ध्रस्वो द्विमात्रो दीर्घ उच्यते ।
त्रिमात्रस्तु प्लुतो ज्ञेयो व्यञ्जनं चार्धमात्रकम् ॥"

कुखुराको स्वर कु कू कू३मा, एकमात्रा, द्विमात्रा र त्रिमात्रा स्पष्ट प्रतीति हुने हुनाले त्यसैको निदर्शन गरेर यहाँ उकारको तीन मात्रा ग्रहण गरिएको हो[४] ।

**स प्रत्येकमिति**– त्यो अच् एक-एक गरेर उदात्त अनुदात्त स्वरितका भेदले तीन तीन प्रकारको छ ।

**उच्चैरिति**- यो सूत्रमा **उच्चैः** यो अव्यय पद हो । **उदात्तः** यो प्रथमान्त पद हो । यो सूत्रमा दुईपद छन् । ताल्वादिस्थानको माथिल्लो भागबाट उत्पन्न हुने अच् उदात्तसंज्ञक होस् ।

---

४ 'उ, ऊ, ऊ३ एतत् कुक्कुटशब्दानुकरणम्' इति परिष्कृतायां सिद्धान्तकौमुद्याम् सोमनाथः ।

**७.नीचैरनुदात्तः** १ । २ । ३० ॥

**८.समाहारः स्वरितः** १ । २ । ३१ ॥

उदात्ताऽनुदात्तत्वे वर्णधर्मौ समाह्रियेते यस्मिन् सोऽच् स्वरितसंज्ञः स्यात् । स नवविधोऽपि प्रत्येकमनुनासिकत्वाननुनासिकत्वाभ्यां द्विधा ।

**९.मुखनासिकावचनोऽनुनासिकः** १ । १ । ८ ॥

मुखसहितनासिकयोच्चार्यमाणो वर्णोऽनुनासिकसंज्ञः स्यात् । तदित्थम्-अ इ ए ऋ एषां वर्णानां प्रत्येकमष्टादश भेदाः । लृवर्णस्य द्वादश तस्य दीर्घाभावात् । एचामपि द्वादश तेषां ह्रस्वाभावात् ॥

---

**नीचैरिति-** यो सूत्रमा **नीचैः** अव्यय पद हो । **अनुदात्तः** प्रथमान्त पद हो । यो सूत्रमा दुई पद छन् । ताल्वादिस्थानका तल्लो भागबाट उत्पन्न हुने अच् अनुदात्तसंज्ञक होस् ।

**समाहार इति-** यो सूत्रमा **समाहारः** यो प्रथमान्त पद हो । **स्वरितः** यो पनि प्रथमान्त पद हो । यो सूत्रमा दुई पद छन् ।

**उदात्तत्वानुदात्तत्वे इति-** वर्णका धर्म उदात्तत्व र अनुदात्तत्व जहाँ समाहृत हुन्छन्, त्यो अच् स्वरितसंज्ञक होस् । (अथवा-ताल्वादिस्थानका दुवै भागबाट उत्पन्न हुने अच् स्वरितसंज्ञक होस् ।)

**स नवविध इति-** त्यो अच् नौ प्रकारको र अपिशब्दात् छ प्रकारको भए पनि प्रत्येक अच्, अनुनासिकत्व र अननुनासिकत्वका भेदले दुई, दुई प्रकारको छ ।

**मुखेति-** यो सूत्रमा **मुखनासिकावचनः**, प्रथमान्त पद हो । **अनुनासिकः** प्रथमान्त पद हो । यो सूत्रमा दुई पद छन् ।

**मुखसहितेति-** मुखसहित नाकबाट उच्चारण हुने वर्ण अनुनासिकसंज्ञक होस् । सबै स्वरवर्ण र य, व, ल नाकको सहयोगबाट र नाकको सहयोग नभैकन पनि उच्चारण गर्न सकिन्छ । नाकको सहयोगबाट बोल्दा यी व्यञ्जन वर्ण उही वर्ण अनुनासिक र नाकको सहयोग नभएर बोल्दा उही वर्ण अननुनासिक हुन्छ । ञ, म, ङ, ण, न, यी व्यञ्जनवर्ण अनुनासिक मात्र हुन्छन् ।

**तदित्थमिति-** त्यो कुरा यसरी जान्नू । अ, इ, उ, ऋ, वर्णहरूका प्रत्येक १८ भेद छन् । लृवर्णका वाह्र भेद छन्, त्यसको दीर्घ रूप नहुनाले । एच्का पनि वाह्र भेद छन् तिनीहरूको ह्रस्वरूप नहुनाले ।

**अठार प्रकारको अकार** : अठार प्रकारको अकार सिद्ध गर्दा "ऊ३कालोऽज्झ्रस्वदीर्घप्लुतः" यो सूत्रले एकमात्रिक उकारको उच्चारणकालसदृश उच्चारणकाल भएको अच् 'अ' लाई ह्रस्व संज्ञा, द्विमात्रिक ऊकारको उच्चारणकालसदृश उच्चारणकाल भएको अच् 'आ' लाई दीर्घसंज्ञा र त्रिमात्रिक ऊ३कारको उच्चारणकालसदृश उच्चारणकाल भएको अच् 'आ३' लाई प्लुतसंज्ञा भएर अ, ह्रस्व आ, दीर्घ आ३ प्लुत यसरी तीन प्रकारको भयो । अनि 'स प्रत्येकमुदात्तादिभेदेन त्रिधा' त्यो अच् एक एक गरेर उदात्त, अनुदात्त, स्वरित, यी भेदले तीन-तीन प्रकारको छ भनेकोले-

ह्रस्व उदात्त, ह्रस्व अनुदात्त, ह्रस्वस्वरित, ३ प्रकारको,

दीर्घ उदात्त, दीर्घ अनुदात्त, दीर्घ स्वरित, ३ प्रकारको

प्लुत उदात्त, प्लुत अनुदात्त, प्लुत स्वरित, ३ प्रकारको, यसरी नौ प्रकारको अकार भयो ।

**१०.तुल्यास्यप्रयत्नं सवर्णम् १ । १ । ९ ॥**

तालवादिस्थानमाभ्यन्तरप्रयत्नश्चेत्येतद्द्वयं यस्य येन तुल्यं तन्मिथः सवर्णसंज्ञं स्यात् ।

---

भए पछि "स नवविधोऽपि०" त्यो अच् नौ प्रकारको अथवा छ प्रकारको भए पनि एक एक गरेर अनुनासिकत्व,र अननुनासिकत्वका भेदले दुई, दुई प्रकारको हुन्छ भनेकोले उक्त नौ प्रकारको अकारका अठार भेद भए-

ह्रस्व उदात्त अनुनासिक, ह्रस्व उदात्त अननुनासिक, २ भेद,
ह्रस्व अनुदात्त अनुनासिक, ह्रस्व अनुदात्त अननुनासिक, २ भेद,
ह्रस्व स्वरित अनुनासिक, ह्रस्व स्वरित अननुनासिक, २ भेद,
दीर्घ उदात्त अनुनासिक, दीर्घ उदात्त अननुनासिक, २ भेद,
दीर्घ अनुदात्त अनुनासिक, दीर्घ अनुदात्त अननुनासिक, २ भेद,
दीर्घ स्वरित अनुनासिक, दीर्घ स्वरित अननुनासिक, २ भेद,
प्लुत उदात्त अनुनासिक, प्लुत उदात्त अननुनासिक, २ भेद,
प्लुत अनुदात्त अनुनासिक, प्लुत अनुदात्त अननुनासिक, २ भेद,
प्लुत स्वरित अनुनासिक, प्लुत स्वरित अननुनासिक, २ भेद, ।
यसरी अठार प्रकारको अकार सिद्ध भयो ।

यी प्रत्येक अकारको उदात्त, अनुदात्त र स्वरित उच्चारण गुरुमुखद्वारा जान्नुपर्छ । अनुनासिक र अननुनासिक अकारको स्वरूप तल दिइन्छ -

अनुनासिक - 'अँ', 'आँ', 'आँ३', यी तीन भेद,
अननुनासिक - 'अ', 'आ', 'आ३' यी तीन भेद,
'अँ' लाई उदात्त, अनुदात्त र स्वरित रूपमा उच्चारण गर्दा ३ प्रकारको हुन्छ ।
त्यस्तै 'आँ' पनि उदात्त, अनुदात्त र स्वरित रूपमा उच्चारण गर्दा ३ प्रकारको हुन्छ ।
त्यस्तै 'आँ३' पनि उदात्त अनुदात्त र स्वरित रूपमा उच्चारण गर्दा ३ प्रकारको हुन्छ ।
त्यस्तै 'अ' पनि उदात्त, अनुदात्त र स्वरित रूपमा उच्चारण गर्दा ३ प्रकारको हुन्छ ।
त्यस्तै 'आ' पनि उदात्त, अनुदात्त र स्वरित रूपमा उच्चारण गर्दा ३ प्रकारको हुन्छ ।
त्यस्तै 'आ३' पनि उदात्त, अनुदात्त र स्वरित रूपमा उच्चारण गर्दा ३ प्रकारको हुन्छ ।

यसरी पहिले अनुनासिक र अननुनासिक, अनि उदात्त आदि भेद परिगणन गर्दा पनि अकारका अठार भेद नै हुन्छन् ।

[५] **तुल्यास्येति**– यो सूत्रमा **तुल्यास्यप्रयत्नम्** यो प्रथमान्त पद हो **सवर्णम्** यो पनि प्रथमान्त पद हो । यो सूत्रमा दुई पद छन् ।

**तालवादीति**– जुन वर्णको जनक भएका तालवादिस्थान र आभ्यन्तर प्रयत्न यी दुई, जुन वर्णका जनक भएका तालवादिस्थान र आभ्यन्तर प्रयत्नले समान छन् त्यो वर्णद्वय परस्परमा सवर्णसंज्ञक होस् ।

---

५ आस्ये (मुखे) भवमास्यम्, प्रकृष्टो यत्नः प्रयत्नः(आभ्यन्तरप्रयत्नः), तुल्यौ आस्यप्रयत्नौ यस्य तुल्यास्यप्रयत्नं तद् वर्णद्वयं सवर्णसंज्ञकं भवति इत्यर्थः । यद्यपि प्रयत्नो द्विधैवास्ति आभ्यन्तरो बाह्यश्च । तथाप्यत्र सूत्रे प्रयत्नशब्देन प्रकृष्टयत्नवान् आभ्यन्तर एव गृहीत इत्यपि ज्ञेयम् ।

**वा.**(ऋलृवर्णयोर्मिथः सावर्ण्यं वाच्यम् ।) अकुहविसर्जनीयानां कण्ठः । इचुयशानां तालु । ऋटुरषाणां मूर्धा । लृतुलसानां दन्ताः । उपूपध्मानीयानामोष्ठौ । ञमङणनानां नासिका च । एदैतोः कण्ठतालु । ओदौतोः कण्ठोष्ठम् । वकारस्य दन्तोष्ठम् । जिह्वामूलीयस्य जिह्वामूलम् । नासिकाऽनुस्वारस्य । यत्नो द्विधा-आभ्यन्तरो वाह्यश्च ।

---

**(वा.)ऋलृवर्णयोरिति-** ऋवर्ण र लृवर्णको परस्परमा संवर्ण संज्ञा होस् भन्नु ।

**वर्णहरूका स्थान- अकुहेति-** अठार प्रकारको अकार, कवर्ग, हकार र विसर्गको कण्ठस्थान हुन्छ । अठार प्रकारको इकार, चवर्ग, यकार र तालव्यशकारको तालुस्थान हुन्छ । अठार प्रकारको ऋकार, टवर्ग,रेफ र मूर्धन्यषकारको मूर्धस्थान हुन्छ । बाह्र प्रकारको लृकार, तवर्ग, लकार र दन्त्यसकारको दन्तस्थान हुन्छ । अठार प्रकारको उकार, पवर्ग र उपध्मानीयविसर्गको ओष्ठस्थान हुन्छ । ञमङणन यी पाँच अक्षरको नासिका स्थान पनि हुन्छ ।[६] एकार र ऐकारको कण्ठस्थान र तालु स्थान हुन्छ । ओकार र औकारको कण्ठस्थान र ओष्ठस्थान हुन्छ । वकारको दन्तस्थान र ओष्ठस्थान हुन्छ । जिह्वामूलीय विसर्गको जिह्वामूलस्थान हुन्छ । अनुस्वारको नासिकास्थान हुन्छ ।

**स्थानबोधकचक्र-**

| अ क ख ग घ ङ ह ः | इ च छ ज झ ञ य श | ऋ ट ठ ड ढ ण र ष | लृ त थ द ध न ल स | उ प फ ब भ म ≍प ≍फ | ञ म ङ ण न ं | ए ऐ | ओ औ | व | ≍क ≍ख | वर्णाः |
|---|---|---|---|---|---|---|---|---|---|---|
| कण्ठः | तालु | मूर्धा | दन्ताः | ओष्ठौ | नासिका | कं.ता. | क.ओ. | द.ओ. | जि.मू. | स्थानानि |

**आभ्यन्तर प्रयत्न र बाह्यप्रयत्नको विवेचना-** वर्णहरू उच्चारण गर्दा केही प्रयास गर्नु पर्दछ, त्यसलाई यत्न अथवा प्रयत्न भनिन्छ ।

**यत्नो द्विधेति-** प्रयत्न दुई प्रकारका छन्- आभ्यन्तरप्रयत्न र बाह्यप्रयत्न । (१) **आभ्यन्तरप्रयत्न-** आभ्यन्तर प्रयत्न भनेको भित्री प्रयत्न हो, त्यो केही सूक्ष्म हुन्छ । (२) **बाह्यप्रयत्न-** बाह्यप्रयत्न भनेको बाहिरी प्रयत्न हो जो आभ्यन्तर प्रयत्नभन्दा स्थूल हुन्छ । सवर्णसंज्ञा गर्दा आभ्यन्तर प्रयत्नको नै उपयोग हुन्छ । आभ्यन्तर वाह्य यी दुवै प्रयत्नको "स्थानेऽन्तरतमः" यो सूत्र लाग्ने ठाउँमा आवश्यकताअनुसार उपयोग गरिन्छ ।

---

६ मूलमा 'एदैतोः', 'ओदौतोः' यसरी तकार पर राखेको समकालिक ए, ओ, ऐ, औ ग्रहण गर्न हैन, स्पष्टताका निमित्त मात्र हो । अतः यहाँ प्लुतको पनि ग्रहण हुन्छ । "एदैतोरित्यादौ तपरत्वमसन्देहार्थम् न तत्कालग्रहणार्थम् तेन् प्लुतस्यापि सङ्ग्रहः" यो तत्त्वबोधिनीकारले भनेका छन् ।

आद्यः पञ्चधा-स्पृष्टेषत्स्पृष्टेषद्विवृतविवृतसंवृतभेदात् । तत्र स्पृष्टं प्रयत्नं स्पर्शानाम् । ईषत्स्पृष्टमन्तःस्थानाम् । ईषद्विवृतमूष्मणाम् । विवृतं स्वराणाम् । ह्रस्वस्यावर्णस्य प्रयोगे संवृतम् । प्रक्रियादशायां तु विवृतमेव ।

वाह्यप्रयत्नस्त्वेकादशधा - विवारः संवारः श्वासो नादो घोषोऽघोषोऽल्पप्राणो महाप्राण उदात्तोऽनुदात्तः स्वरितश्चेति ।

---

**आद्य इति-** ती दुईमध्ये पहिलो आभ्यन्तरप्रयत्न-स्पृष्टप्रयत्न, ईषत्स्पृष्टप्रयत्न, ईषद्विवृतप्रयत्न, विवृतप्रयत्न, संवृतप्रयत्न, का भेदले पाँच प्रकारको छ ।

**तत्रेति-** त्यहाँ स्पर्शसंज्ञकवर्णहरूको अर्थात् "क"देखि "म"सम्मका वर्णको स्पृष्टप्रयत्न हुन्छ । अन्तःस्थसंज्ञाभएका वर्णको अर्थात् य,र,ल,व यिनको ईषत्स्पृष्ट प्रयत्न हुन्छ । ऊष्मसंज्ञकवर्ण अर्थात् श,ष,स,ह यिनको ईषद्विवृत प्रयत्न हुन्छ । स्वरवर्ण अर्थात् अच्को विवृत प्रयत्न हुन्छ ।

**ह्रस्वस्येति-** ह्रस्व अवर्णको प्रयोग अर्थात् परिनिष्ठितरूपमा संवृतप्रयत्न हुन्छ । साधनिकावस्थामा अर्थात् प्रक्रियाको अवस्थामा त विवृत प्रयत्न नै हुन्छ ।

**१. आभ्यन्तरप्रयत्नचित्रम्**

| स्पृष्टाः | ईषत्स्पृष्टाः | विवृताः | ईषद्विवृताः | संवृतः |
|---|---|---|---|---|
| क. च. ट. त. प.<br>ख. छ. ठ. थ. फ.<br>ग. ज. ड. द. व.<br>घ. झ. ढ. ध. भ.<br>ङ. ञ. ण. न. म. | य.<br>र.<br>ल.<br>व. | अ. ए.<br>इ. ओ.<br>उ. ऐ.<br>ऋ. औ.<br>लृ. | श.<br>ष.<br>स.<br>ह. | ह्रस्व : अकारः<br>प्रयोगे |

**बाह्यप्रयत्नस्त्विति-** वाह्यप्रयत्न त एघार प्रकारको छ-

**विवार इति-** विवार १ संवार २ श्वास ३ नाद ४ घोष ५ अघोष ६ अल्पप्राण ७ महाप्राण ८ उदात्त ९ अनुदात्त १० स्वरित ११ ।

यी एघार प्रयत्नमा तीन वर्ग छन् (१) विवार, संवार, श्वास, नाद, घोष, अघोषको एकवर्ग, (२) अल्पप्राण, महाप्राणको दोस्रो वर्ग (३) उदात्त, अनुदात्त, स्वरितको तेस्रो वर्ग, यो तेस्रो वर्गका प्रयत्न स्वरवर्णका मात्र हुन् । यिनीहरूको विवरण उदात्त आदि संज्ञाविधायक सूत्रद्वारा गरिसकियो । बाँकीका दुई वर्ग व्यञ्जनवर्णका हुन्, यसमा पनि पहिलो वर्गका दुई भाग छन् (१) विवार, श्वास, अघोष (२) संवार, नाद, घोष । यसैगरी दोस्रो वर्गका पनि दुई भाग छन् (१) अल्पप्राण (२) महाप्राण । प्रत्येक वर्णका तीन प्रयत्न पहिलो वर्गवाट र एक प्रयत्न दोस्रो वर्गवाट हुन्छन् । यहां विवार आदि प्रयत्नको अर्थ संक्षेपमा अभिव्यक्त गरिन्छ-

**विवारयति विकासयति मुखमिति विवारः-** वर्णको उच्चारण गर्ने वेलामा मुख खुल्नु । जुन वर्णहरूको उच्चारण गर्दा मुख खुल्छ ती वर्णहरूको विवार प्रयत्न हुन्छ ।

**संवारयति मुखमिति संवारः-** उच्चारण गर्दा मुख सङ्कुचित हुनु । जुन वर्णको उच्चारण गर्दा मुख सङ्कुचित हुन्छ, त्यसको संवार प्रयत्न हुन्छ ।

खरो विवाराः श्वासा अघोषाश्च । हशः संवारा नादा घोषाश्च । वर्गाणां प्रथमतृतीयपञ्चमा यणश्चाल्पप्राणाः । वर्गाणां द्वितीयचतुर्थौ शलश्च महाप्राणाः । कादयो मावसानाः स्पर्शाः । यणोऽन्तःस्थाः । शल ऊष्माणः ।

---

**श्वासयति इति श्वासः**– जुन वर्णको उच्चारण गर्दा मुखबाट अधिक श्वास चल्छ, त्यो वर्णको श्वास प्रयत्न हुन्छ ।

**घोषयति शब्दतरङ्गमिति घोषः**– जुन वर्णको उच्चारण गर्दा घनघनाहट उत्पन्न हुन्छ, त्यो वर्णको घोष प्रयत्न हुन्छ ।

**न घोषः=अघोषः**- जुन वर्णको उच्चारणमा घनघनाहट पैदा हुँदैन, त्यो वर्णको अघोप प्रयत्न हुन्छ ।

**नादयति मुखमिति नादः**- जुन वर्णको उच्चारण गर्दा अर्को अव्यक्त शव्द भएको प्रतीति हुन्छ । त्यसको नाद प्रयत्न हुन्छ ।

**अल्पप्राण**- प्राणवायुको थोरै उपयोग हुने ।

**महाप्राण-** प्राणवायुको धेरै उपयोग हुने ।

यो विषय ध्वनिशास्त्रसम्वन्धी हो । ध्वनिसूचक यन्त्रद्वारा यी प्रयत्नहरू स्पष्ट प्रतीतिगम्य हुन्छन् । व्याकरण शास्त्रको निमित्त पनि यसको ज्ञान आवश्यक छ ।

**खर इति-** खर् प्रत्याहारमा पढिएका वर्णहरू विवार, श्वास र अघोषप्रयत्न भएका हुन्छन् ।

**हश इति-** हश् प्रत्याहारमा पढिएका वर्णहरू संवार नाद र घोष प्रयत्न भएका हुन्छन् ।

**वर्गाणामिति-** वर्गहरूका पहिलो, तेस्रो र पाँचौं वर्ण (१) क, च, ट, त, प, (२) ग, ज, ड, द, व (३) ङ, ञ, ण, न, म र यण् प्रत्याहारमा पढिएका वर्णहरू अर्थात् य,र, ल, व, अल्पप्राण प्रयत्न भएका हुन्छन् ।

**वर्गाणामिति-** वर्गहरूको दोस्रा, चौथा वर्ण अर्थात् (१) ख,छ,ठ,थ,फ, (२) घ,झ,ढ,ध,भ र शल् प्रत्याहारमा पढिएका वर्ण अर्थात् श,ष,स,ह यी वर्णहरू महाप्राण प्रयत्न भएका छन् ।

("अचः संवारा नादा घोपाश्चाल्पप्राणाः" इति भाष्यम्) अच्हरूको पनि संवार, नाद, घोष, अल्पप्राण प्रयत्न हुन्छ, भनेर भाष्यकारले भनेका छन् ।

| १ वाह्यप्रयत्नचित्रम् | | | | |
|---|---|---|---|---|
| **विवारश्वासाघोषाः** | **संवारनादघोषाः** | **अल्पप्राणाः** | **महाप्राणाः** | **उदात्तानुदात्तस्वरिताः** |
| क ख श | ग घ ङ य | क ग ङ य | ख घ श | अ ए |
| च छ ष | ज झ ञ व | च ज ञ व | छ झ ष | इ ओ |
| ट ठ स | ड ढ ण र | ट ड ण र | ठ ढ स | उ ऐ |
| त थ | द ध न ल | त द न ल | थ ध ह | ऋ औ |
| प फ | व भ म ह | प व म | फ भ | लृ |

**कादय इति-** क आदि गरिएका मसम्मका वर्णहरू स्पर्शसंज्ञा भएका हुन्छन् ।

**यण इति-** यण् अर्थात् य,व,र,ल, यी वर्णहरू अन्तःस्थसंज्ञक हुन्छन् ।

**शल इति-** शल् अर्थात् श,ष,स,ह यी वर्णहरू ऊप्मसंज्ञक हुन्छन् ।

अचः स्वराः । ≍क ≍ख इति कखाभ्यां प्रागर्धविसर्गसदृशो जिह्वामूलीयः । ≍ प ≍फ इति पफाभ्यां प्रागर्धविसर्गसदृश उपध्मानीयः । अं अः इत्यचः परावनुस्वारविसर्गौ ॥

**११.अणुदित्सवर्णस्य चाप्रत्ययः १ । १ । ६९ ॥** प्रतीयते विधीयत इति प्रत्ययः । अविधीयमानोऽणुदिच्च सवर्णस्य संज्ञा स्यात् । अत्रैवाण् परेण णकारेण ।

---

**अच इति-** अच् अर्थात् अ इ उ ऋ लृ ए ओ ऐ औ यी वर्णहरू स्वरसंज्ञक हुन्छन् । वर्णसमाम्नायभित्र ह्रस्व स्वरमात्र भए पनि सवर्णसंज्ञाद्वारा यिनका ह्रस्व, दीर्घ, प्लुतभेद सबै स्वर कहिन्छन् ।

**क,ख इति-** ≍क ≍ख यहाँ क र खदेखि अगाडि रहेको आधाविसर्ग अर्थात् सुल्टो उल्टो अर्धचन्द्र जस्तो जिह्वामूलीय विसर्ग हो ।

**प,फ इति-** ≍ प ≍फ यहाँ प र फदेखि अगाडि रहेको अर्धविसर्ग अर्थात् सुल्टो र उल्टो अर्धचन्द्र जस्तो उपध्मानीय विसर्ग हो ।

**अं,अ इति-** अं अः यहाँ अच्देखि पर रहेका अनुस्वार र विसर्ग हुन् । यिनको (जिह्वामूलीय, उपध्मानीय, अनुस्वार, विसर्गको) उच्चारण गुरुमुखवाट नै सिक्नु पर्दछ । य,र, ल, व, यी चार वर्ण स्वर र व्यञ्जनको बीचमा रहने हुनाले अन्तःस्थ भनिएको हो । शल्लाई ऊष्म भन्नको कारण यी वर्ण उच्चारण गर्दा तातो श्वास आउँछ । यी चारै अक्षर महाप्राण प्रयत्नवाला पनि छन् ।

सामान्य विसर्ग पुरानो लिपिमा '⸾' यस्तो चिह्न भएको थियो, यसैले '≍' यो जिह्वामूलीय विसर्ग र उपध्मानीय विसर्ग यस्तो चिह्न भएको सामान्यविसर्गको आधा जस्तो देखिन्छ ।

अनुनासिक स्वर र अनुनासिक व्यञ्जन य, व, ल, का स्वरको शिरमा विन्दुसहित अर्धचन्द्र हुन्छ । अनुस्वारको स्वरूप शिरविन्दु हो । अक्षरको अगाडि रहेका दुई बिन्दु विसर्गको स्वरूप हो । यी अनुस्वार र विसर्ग स्वरवर्णदेखि परतिर रहन्छन् ।

**अणुदिति-** यो सूत्रमा **अण्** यो प्रथमान्त पद हो । **उदित्** यो पनि प्रथमान्त पद हो । **सवर्णस्य** यो षष्ठचन्त पद हो । **च** यो अव्यय पद हो । **अप्रत्ययः** यो प्रथमान्त पद हो । यसरी यो सूत्रमा पाँच पद छन् ।

**प्रतीयत इति-** प्रतीयते यसको पर्याय 'विधीयते' हो, त्यसैले विधान गरिनेलाई यहाँ प्रत्ययशब्दले लिइएको छ ।

**अविधीयमान इति-** विधेयबोधकभिन्न अण्[७] र उदित् सवर्णको संज्ञा हुन्छ अर्थात् सवर्णको ग्राहक हुन्छ ।

**अत्रैवेति-** यस सूत्रमा मात्र अण् प्रत्याहार पल्ला णकारले लिइन्छ ।

यसको आशय यो हो, वर्णसमाम्नायभित्र खुट्टो काटिएको 'ण्' अन्तमा हुने दुई सूत्र छन् । यौटा "अइउण्" अर्को "लण्" त्यसले गर्दा अण् प्रत्याहार दुई प्रकारको हुन्छ । त्यसमध्ये (१) पूर्वको 'ण्' अर्थात् "अइउण्" यो सूत्रको णकारलाई लिएर वनेको 'अण्'प्रत्याहार, जसभित्र अ, इ, उ तीन अक्षर मात्र हुन्छन् । (२) पल्लो 'ण्' अर्थात् "लण्" सूत्रको णकारलाई लिएर वनेको 'अण्'प्रत्याहार, जसभित्र अ, इ, उ, ऋ, लृ, ए, ओ, ऐ, औ, ह, य, व,र, ल, यी १४ अक्षर पर्दछन् । "अणुदित्सवर्णस्य चाप्रत्ययः" यो सूत्रमा पछिल्लो णकारलाई लिएर वनेको अणप्रत्याहार लिइन्छ" ।

---

७ "परेणैवेण्ग्रहाः सर्वे पूर्वेणैवाण्ग्रहा मताः । ऋतेऽणुदित्सवर्णस्येत्येतदेकं परेण तु ॥"
इण् प्रत्याहार पल्लो णकारले र अण् प्रत्याहार पूर्व णकारले नै सर्वत्र लिइन्छ । "अणुदित्सवर्णस्य चाप्रत्ययः" यस सूत्रमा भने अण् प्रत्याहार पल्लो णकारले लिइन्छ ।

कु चु टु तु पु एते उदितः। तदेवम्--अ इत्यष्टादशानां संज्ञा। तथेकारोकारौ। ऋकारस्त्रिंशतः। एवं लृकारोऽपि। एचो द्वादशानाम्। अनुनासिकाननुनासिकभेदेन यवला द्विधा; तेनाननुनासिकास्ते द्वयोर्द्वयोस्संज्ञा॥

**१२.परः संनिकर्षः संहिता १।४।१०९॥**

वर्णानामतिशयितः सन्निधिः संहितासंज्ञः स्यात्॥

**१३.हलोऽनन्तराः संयोगः १।१।७॥**

अज्भिरव्यवहिता हलः संयोगसंज्ञाः स्युः॥

**१४.सुप्तिङन्तं पदम् १।४।१४॥**

सुबन्तं तिङन्तं च पदसंज्ञं स्यात्॥

**इति संज्ञाप्रकरणम्।**

---

**कुचु इति-** कु, चु, टु, तु, पु, यिनलाई उदित् भनिन्छ।

**तदेवमिति-** त्यो कुरा यसरी जान्नु। 'अ' यो अठारवटा अकारको संज्ञा (ग्राहक) हुन्छ। ऋकार तीस वटाको संज्ञा (ग्राहक) हुन्छ। लृकार पनि तीसवटाको संज्ञा (ग्राहक) हुन्छ। एच्हरू बाह्र बाह्र वटाका संज्ञा (ग्राहक) हुन्छन्। अनुनासिक र अननुनासिकका भेदले यवल दुई दुई वटाका संज्ञा (ग्राहक) हुन्छन्।

**तेनेति-** त्यसकारण सूत्रमा प्रयोग गरिएका ती अननुनासिक य, व, ल,हरू दुई-दुई वटाका संज्ञा (ग्राहक) जान्नू।

**परेति-** यो सूत्रमा **परः** प्रथमान्त पद हो। **सन्निकर्षः** यो पनि प्रथमान्त पद हो। **संहिता** यो पनि प्रथमान्त पद हो। यो सूत्रमा तीन पद छन्।

**वर्णानामिति-** वर्णहरूको अत्यन्त नजीक उच्चारण हुनु संहितासंज्ञक होस्।

**हल इति-** यो सूत्रमा **हलः** प्रथमान्त पद हो। **अनन्तराः** यो पनि प्रथमान्त पद हो। **संयोगः** यो पनि प्रथमान्त पद हो। यो सूत्रमा तीन पद छन्।

**अज्भिरिति-** अच्ले नछेकिएका हल्वर्णहरू संयोगसंज्ञक होऊन्।

(बहुत्वमतन्त्रम्) यहाँ बहुत्वविवक्षित छैन। अनेकत्वमात्र विवक्षित छ। दुई व्यञ्जनका बीचमा स्वर नहुँदा अथवा तीन/चार अक्षरको बीचमा स्वरवर्ण नहुँदा पनि ती व्यञ्जन संयोगसंज्ञक हुन्छन्।

**सुबिति-** यो सूत्रमा **सुप्तिङन्तम्** यो प्रथमान्त पद हो। **पदम्** यो पनि प्रथमान्त पद हो। यो सूत्रमा यी दुई पद छन्।

**सुबन्तेति-** सुबन्ततदादि[८] र तिङन्ततदादि पदसंज्ञक होस्।

**संज्ञाप्रकरण समाप्त भयो**

---

८ 'सुबन्त र तिङन्त पदसंज्ञक होस्', यस्तो अर्थ गर्ने हो भने रामः यहाँ 'मः' यो पनि सुबन्त हुनाले 'मः' यसलाई पदसंज्ञा होला। त्यस्तै भवति यहाँ 'वति' यो पनि तिङन्त छ र 'वति'लाई पदसंज्ञा होला। अतः सुबन्ततदादि तिङन्ततदादि भन्नुपर्छ। यसो भनेपछि जसबाट सुप् र तिङ् विधान गरिन्छ, त्यो आदिमा हुने भन्ने अर्थ आउँछ र 'रामः', 'भवति' इत्यादिलाई मात्र पदसंज्ञा हुन्छ।

## अथाच्सन्धिप्रकरणम्

**१५.इको यणचि** ६ । १ । ७७ ॥

इकः स्थाने यण् स्यादचि संहितायां विषये । सुधी उपास्य इति स्थिते ॥

**१६.तस्मिन्निति निर्दिष्टे पूर्वस्य** १ । १ । ६६ ॥

सप्तमीनिर्देशेन विधीयमानं कार्यं वर्णान्तरेणाव्यवहितस्य पूर्वस्य बोध्यम् ॥

---

### अब अच्सन्धिप्रकरण आरम्भ गरिन्छ ।

**इको यणिति**– इक्का स्थानमा यण् होस् अव्यवहित अच् पर भएमा संहिताका विषयमा । 'सुधी+उपास्य' यस्तो स्थिति भएमा ।

**इकः** यो षष्ठचन्त पद हो "षष्ठी स्थानेयोगा" भन्ने परिभाषा सूत्र लगाएर "इकःस्थाने" यस्तो अर्थ भयो । यण् यो प्रथमान्तपद हो । "असति बाधके प्रथमाया विधेयविभक्तित्वम्" यदि कोई बाधक छैन भने प्रथमाविभक्त्यन्त पद विधेय हुन्छ । यो सिद्धान्तका आधारमा यण् विधेय भयो । अचि यसको अव्यवहित अच् पर भएमा भन्ने अर्थ "तस्मिन्निति निर्दिष्टे पूर्वस्य" यो परिभाषा सूत्र लगाएर आएको हो । "संहितायाम्" यो अधिकार चलिरहेको छ । "तस्मिन्निति निर्दिष्टे" यो परिभाषा सूत्र नलगाउँदा "इको यणचि" सूत्रको कस्तो अर्थ थियो ? लगाएपछि कस्तो अर्थ भयो भन्ने कुरा तल 'सुद्ध्युपास्यः'को सिद्धिप्रक्रियाबाट ज्ञात हुनेछ ।

**सुद्ध्युपास्यः/सुध्युपास्यः**– "इको यणचि" यस सूत्रमा अचि यो औपश्लेषिक अधिकरणमा भएको सप्तम्यन्त पद हो र "इको यणचि" यो सूत्रको 'अच्का नजीकमा रहेका इक् का स्थानमा यण् होस्' भन्ने अर्थ भयो । अब 'सुधी+उपास्यः' यहाँ अच्का नगीचमा रहेको इक् त सुको उकार धीको ईकार, उपास्यको उकार तीनवटै छन् र तीनवटैका स्थानमा यण् पायो । कसका स्थानमा यण् गर्ने ? कसका स्थानमा नगर्ने ? यस्तो अनियम भयो र "अनियमे नियमकारिणी परिभाषा" नियम नभएका ठाउँमा नियम गर्ने परिभाषासूत्र छ, त्यो कुन सूत्र हो, त ?

**तस्मिन्निति**- सप्तम्यन्तपदका निर्देशले विधान गरिने कार्य अर्का वर्णले न छेकिएका सप्तम्यन्तार्थदेखि पूर्वका स्थानमा जान्नू ।

अब "इको यणचि" यस सूत्रमा "अचि" यो सप्तम्यन्त पद छ, त्यसका निर्देशले विधान गरिने यण् कार्य छ, त्यो कार्य सप्तम्यन्तार्थ अर्थात् अच्देखि अव्यवहित पूर्वका स्थानमा हुन्छ, यो नियम भएपछि "इको यणचि" यो सूत्रको अर्थ 'अच्देखि अव्यवहित पूर्ववर्ती इक्का स्थानमा यण् होस्' यस्तो भयो । यसो भन्नु र 'इक्का स्थानमा यण् होस् अव्यवहित अच् पर भएमा' भन्नु यौटै अर्थ हो र वृत्तिकारले तदनुसार वृत्ति लेखेका छन् (इकः स्थाने यण् स्यादचि संहितायां विषये ।) इक्का स्थानमा यण् होस् अव्यवहित अच् पर भएमा संहिताका विषयमा ।

"इको यणचि" यो सूत्रको यस्तो अर्थ भएपछि 'सुधी+उपास्यः' यहाँ सुका उकारदेखि धीको ईकार अव्यवहित पर छैन 'उपास्यः' का उकारदेखि पाको आकार पनि अव्यवहित पर

**१७.स्थानेऽन्तरतमः १ । १ ५० ॥**

प्रसङ्गे सति सदृशतम आदेशः स्यात् । सुध्य् उपास्य इति जाते ॥

**१८.अनचि च ८ । ४ । ४७ ॥**

अचः परस्य यरो द्वे वा स्तो न त्वचि । इति धकारस्य द्वित्वेन सुध्ध्य् उपास्य इति जाते ॥

**१९.झलां जश् झशि ८ । ४ । ५३ ॥**

स्पष्टम् । इति पूर्वधकारस्य दकारः ॥

**२०.संयोगान्तस्य लोपः ८ । २ । २३ ॥**

संयोगान्तं यत्पदं तस्य लोपः स्यात् ।

---

छैन । 'सुधी'का 'ईकार'देखि 'उपास्यः'को उकार अव्यवहित अच् पर छर 'सुधी'का ईकारका स्थानमा यण् भनेका य, व, र, ल, सबै पायो र ईकारका स्थानमा यी ४ मध्ये कुन विधान गर्ने भन्ने अनियम भयो । पुनः अर्को परिभाषा सूत्र चाहियो । त्यो परिभाषा सूत्र कुन हो ?

**स्थानेऽन्तरतम इति-** एक स्थानीका स्थानमा धेरै आदेश प्राप्त भए पछि स्थानीको स्थान, अर्थ, गुण, प्रमाणले अतिशयतुल्य जुन आदेश छ त्यही होस् ।

यहाँ स्थानी सुधीका ईकारका स्थानमा य, व, र, ल, यी चार आदेश पाएको छ । "स्थानेऽन्तरतमः" यो सूत्रले स्थानीको स्थान, अर्थ, गुण, प्रमाणले अतिशय तुल्य आदेश होस् भनेकोले यी चार आदेश य, व, र, ल, मा ईकारको स्थानले अतिशय तुल्य यकार नै छ । किन कि ईकारको पनि तालुस्थान हो र यकारको पनि तालुस्थान हो, अतः सुधीका ईकारका स्थानमा यकार भयो र 'सु ध् य्+उपास्यः' यस्तो भयो । भएपछि -

**अनचि चेति-** अच्देखि पर रहेका यर्को द्वित्व विकल्पले होस् अच् पर भएमा त नहोस् । यो सूत्रले धकारको द्वित्व हुन्छ ।

'सुध्य्+उपास्यः' यहाँ सुका उकारदेखि पररहेको "यर्" धकार छ उसदेखि पर अच् पनि छैन यकार पर छ त्यो व्यञ्जन हो । अतः धकारको यस सूत्रले द्वित्व भएर 'सुध्ध्य् उपास्यः' यस्तो रूप भयो । भएपछि–

**झलामिति-** झल्का स्थानमा जश् आदेश होस् झश् पर भएमा ।

**स्पष्टमिति-** सूत्रमा कुनै पदको अनुवृत्ति ल्याउन नपर्ने हुनाले स्पष्टम् भनिएको हो । अर्थात् सूत्रबाट अर्थ स्पष्ट छ । विधिसूत्रमा स्थानी, विधेय र निमित्त हुन्छन् । यस सूत्रमा यी तीनै कुरा छन् । झलां यो पद स्थानीको बोधक हो । जश् विधेय हो, झशि यो निमित्त हो । यी तीनै पद सूत्रमा उल्लेख भएकोले सूत्रबाट नै अर्थ स्पष्ट छ । यो सूत्रले पहिलो धकारका स्थानमा दकार हुन्छ ।

'सु ध् ध् य् उपास्यः' यहाँ "झलां जश् झशि" लगाउँदा झल्छ पहिलो धकार त्यसदेखि पर झश् छ दोस्रो धकार अतः प्रथम धकारका स्थानमा प्राप्त जश् ज, व, ग, ड, द, मध्ये "स्थानेऽन्तरतमः" लगाएर दन्तस्थानी धकारको अतिशय तुल्य दन्तस्थान भएको दकार आदेश भएपछि 'सुद् ध् य् + उपास्यः' यस्तो रूप भयो । भएपछि -

**संयोगेति-** संयोगान्त जो पद छ त्यसको लोप होस् । "पदस्य" यो सूत्रको यस सूत्रमा अधिकार आउँछ, अर्थात् अनुवृत्ति आउँछ । 'पदस्य' यो शब्द विशेष्य र 'संयोगान्तस्य' यो शब्द विशेषण हो । अतः यस सूत्रको संयोगान्त पदको लोप होस् यो अर्थ भयो ।

अब 'सुद्ध्य्+उपास्यः' यहाँ "संयोगान्तस्य लोपः" यो सूत्र लगाउँदा संयोगान्त पद

**२१.अलोऽन्त्यस्य १ । १ । ५२ ॥**

षष्ठीनिर्दिष्टोऽन्त्यस्याल आदेशः स्यात् । इति यलोपे प्राप्ते-

**वा**.(यणः प्रतिषेधो वाच्यः) । सुद्ध्युपास्यः । मद्ध्वरिः । धात्त्रंशः । लाकृतिः ॥

---

'सुद्ध्य्' सबैको लोप पायो, तर त्यसैको नियामक सूत्र छ- "अलोऽन्त्यस्य"

**अलोऽन्त्यस्येति**- आदेश स्थानषष्ठचन्तपदबोध्य अन्त्य अल्का स्थानमा होस् ।

'सुद्ध्य्+उपास्यः' यहाँ "अलोऽन्त्यस्य" यो सूत्र लगाउँदा लोपआदेश विधायकसूत्र "संयोगान्तस्य लोपः"हो त्यसमा स्थानषष्ठचन्त पद छ 'संयोगान्तस्य' तद्बोध्य पद छ, 'सुद्ध्य्' त्यसको अन्त्य अल् छ, 'सुद्ध्य्' को यकार र त्यसको लोप पायो अनि–

**यण इति**- संयोगान्तपदको अन्तिमवर्ण यण् छ भने लोप हुँदैन । यो[९] वार्तिक "संयोगान्तस्य लोपः" यो सूत्रसँग सम्बन्धित हो र त्यसको अपवाद पनि हो ।

यो वार्तिक लगाएर संयोगान्तपदको अन्तमा रहेको यण्-'सुद्ध्य्'का यकार-को लोप नभएपछि "अज्झीनो वर्णः परं धावति" (अच्ले रहित वर्ण पल्लोवर्णमा लाग्न जान्छ) यो न्याय अनुसार 'सुद्ध्य्+उपास्यः' यहाँ यकार उकारमा मिल्न जाँदा 'सुद्ध्+युपास्यः' भयो, धकार यकारमा लाग्न जाँदा 'सुद्+ध्युपास्यः' भयो, दकार धकारमा लाग्न जाँदा 'सुद्ध्युपास्यः' सिद्ध भयो "अनचि च" ले धकारको द्वित्व नभएको पक्षमा 'सुध्य्+उपास्यः' यहाँ धकार र यकार उकारमा मिलेपछि 'सुध्युपास्यः' यो रूप पनि सिद्ध भयो ।

**मद्ध्वरिः/मध्वरिः**- 'मधु+अरिः' यस्तो स्थितिमा मधुका उकारका स्थानमा "इको यणचि" ले यण्भनेका य,व,र,ल, यी सबै पाएमा "स्थानेऽन्तरतमः" लगाएर ओष्ठस्थानी उकारका स्थानमा ओष्ठस्थानी वकार भयो, 'मध्व्+अरिः' भयो । पूर्ववत् "अनचि च"ले धकारको द्वित्व भयो, "झलां जश् झशि"ले जश्त्व भयो 'मद्ध्व्+अरिः' भयो । पूर्ववत् संयोगान्तलोप प्राप्त भएपछि "यणः प्रतिषेधो वाच्यः" यस वार्तिकले निषेधभएपछि वर्णसम्मेलन भयो 'मद्ध्वरिः' सिद्ध भयो । द्वित्व नभएको पक्षमा 'मध्व्+अरिः' यहाँ पूर्ववत् वर्णमेलन भयो 'मध्वरिः' सिद्ध भयो ।

**धात्त्रंशः/धात्रंशः**– 'धातृ+अंशः' यस्तो स्थिति भएमा "इको यणचि"ले धातृका ऋकारका स्थानमा यण्भनेका य,व,र,ल, यी सबै पाएमा "स्थानेऽन्तरतमः" लगाएर मूर्धस्थानी ऋकारका स्थानमा मूर्धस्थानी रेफ भयो- 'धात्र्+अंशः' भयो । "अनचि च"ले तकारको द्वित्व भयो संयोगान्तलोपको "यणः प्रतिषेधो वाच्यः" यो वार्तिक लगाएर निषेध र पूर्ववत् वर्णसम्मेलन भएपछि 'धात्त्रंशः' रूप सिद्ध भयो । द्वित्व नभएको पक्षमा 'धात्र्+अंशः' यहाँ वर्ण सम्मेलन भयो- 'धात्रंशः' यो रूप पनि सिद्ध भयो ।

**लाकृतिः**- 'लृ+आकृतिः' यस्तो स्थितिमा लृका लृकारका स्थानमा "इको यणचि" ले यण्-भनेका य,र,ल,व, यी सबै पाएमा "स्थानेऽन्तरतमः" यो सूत्र लगाएर दन्तस्थानी लृकारका स्थानमा दन्तस्थानी लकार भयो, संयोगान्त लोपको पूर्ववत् निपेध भयो । वर्णसम्मेलन भयो । 'लाकृतिः' यो रूप सिद्ध भयो ।

---

९ वार्तिकको लक्षण– "उक्तानुक्तदुरुक्तानां यत्र चिन्ता प्रवर्तते ।
तं ग्रन्थं वार्तिकं प्राहुर्वार्तिकज्ञा विचक्षणाः ॥" इति ।

जहाँ उक्त अनुक्त र दुरुक्त (त्रुटिपूर्ण) कथनको विचार गरिन्छ, त्यस ग्रन्थलाई विद्वान्हरू वार्तिक भन्दछन् ।

**२२.एचोऽयवायावः ६ । १ । ७८ ॥**
एचः स्थानेऽय् अव् आय् आव् एते स्युरचि ।
**२३.यथासंख्यमनुदेशः समानाम् १ । ३ । १० ॥**
समसम्वन्धी विधिर्यथासंख्यं स्यात् । हरये ।

---

'सुद्ध्युपास्यः', 'सुध्युपास्यः' । 'मद्ध्वरिः', 'मध्वरिः' यी प्रयोगहरूको साधने प्रकार समान नै छ । 'धात्त्रंशः', 'धात्रंशः' यी दुई रूप सिद्ध गर्दा "झलां जश् झशि" यो सूत्र लाग्दैन । लाकृतिः सिद्ध गर्दा "झलां जश् झशि", "अनचि च" यी दुवै सूत्र लाग्दैनन् । यी प्रयोगको अर्थ-

**सुद्ध्युपास्यः/सुध्युपास्यः** । सुधीभिर्विद्वद्भिरुपास्यः, सेवनीयो भगवान् । (विद्वान्हरूले सेवा गर्न योग्य भगवान् ।)

**मद्ध्वरि/मध्वरिः** । मधोर्मधुनामकराक्षसस्य, अरिः शत्रुः । (मधुनामकराक्षसका शत्रु विष्णु ।)

**धात्त्रंशः/धात्रंशः** । धातुर्ब्रह्मणः, अंशश्चन्द्रः । (ब्रह्माका अंश चन्द्रमा ।) सोमोऽभूद् ब्रह्मणोंशेन" यो भागवतमा छ ।

**लाकृतिः**- उल् आकृतिः लाकृतिः (लृकारको आकार अथवा दितिको आकार ।) लृ शव्द दितिवाचक छ ।

**यणसन्धि भएका अरू उदाहरण-**

यदि+अपि= यद्ध्यपि/यद्यपि । दधि+आनय= दद्ध्यानय/दध्यानय ।
इति+उवाच= इत्त्युवाच/इत्युवाच । प्रति+एकम्= प्रत्त्येकम्/प्रत्येकम् ।
अनु+एति= अन्न्वेति/अन्वेति । सु+आगतम्= स्वागतम् ।
पितृ+अनुमतिः= पित्त्रनुमतिः/पित्रनुमतिः । मातृ+आदेशः= मात्त्रादेशः/मात्रादेशः ।
शतृ+आदेशः= शत्त्रादेशः/शत्रादेशः ।

इत्यादि उदाहरणहरू इक्का स्थानमा यण् भएर बनेका हुन् ।

**एच इति**- एच्का स्थानमा अय्, अव्, आय्, आव्, यी आदेश[१०] होऊन्, अव्यवहित अच् पर भएमा ।

**यथासङ्ख्येति**- तुल्यसङ्ख्यावान् सम्वन्धी विधि क्रमैले होस् । अर्थात् जहाँ आदेशर स्थानी, आगम र आगमी, प्रत्यय र प्रकृति, आदि बराबर संख्यामा निर्देश गरिएका हुन्छन् त्यहाँ आदेश, आगम, प्रत्यय आदि विधान गर्दा पहिलाको पहिलो, दोस्राको दोस्रो, तेस्राको तेस्रो, चौथाको चौथो, आदि क्रमले विधान गर्नुपर्छ भन्ने यो सूत्रको भाव हो ।

उक्त "एचोऽयवायावः" यो सूत्रमा स्थानी र आदेश बरावर छन्, अर्थात् स्थानी पनि ए,ओ,ऐ,औ, यी ४ छन् । आदेश पनि अय्, अव्, आय्, आव्, यी ४ छन् । क्रमैले हुँदा 'ए' का स्थानमा 'अय्'आदेश, 'ओ' का स्थानमा 'अव्'आदेश 'ऐ' का स्थानमा 'आय्'आदेश र 'औ' का स्थानमा 'आव्'आदेश हुन्छ ।

**हरये**- (हरिका निमित्त) 'हरे+ए' यस्तो स्थितिमा 'हरे' को एकारका स्थानमा 'ए' को 'ए'कार अव्यवहित अच् पर हुनाले "एचोऽयवायावः" ले अय्, अव्, आय्, आव्, यी चारै आदेश पायो, कसलाई विधान गर्ने ? कसलाई नगर्ने ? यो अनियम भयो र "अनियमे नियमकारिणी

---

१० अय्, अव्, आय्, आव्, यी आदेशमा "हलन्त्यम्"ले यकार वकारको इत्संज्ञा हुँदैन । इत्संज्ञा गर्न केही फल चाहिन्छ, यहाँ इत्संज्ञाको केही फल छैन । "व्याकरणशास्त्रे या या संज्ञा सा सा फलवती भवति" यो नियम छ ।

विष्णवे । नायकः । पावकः ॥

**२४.वान्तो यि प्रत्यये ६ । १ । ७९ ॥**

यकारादौ प्रत्यये परे ओदौतोरव् आव् एतौ स्तः । गव्यम् । नाव्यम् ।

---

परिभाषा", "नियम नभएका ठाउँमा नियम गर्ने परिभाषा सूत्र छ" त्यो कुन सूत्र हो ? "यथासंख्यमनुदेशः समानाम्" यो सूत्रले तुल्यसङ्ख्यावान्को विधि क्रमैले होस् भनेकोले स्थानी पनि- ए,ओ,ऐ,औ, यी चार, आदेश पनि अय्, अव्, आय्, आव्, यी चार, यो तुल्यसंख्यावान्को विधि छ र क्रमैले हुँदा स्थानीमा पहिलो 'ए'कारका स्थानमा, आदेशमा पहिलो अय् भयो, 'हर्+अय्+ए' भयो, वर्णसम्मेलन गर्दा 'हरये' रूप सिद्ध भयो ।

**विष्णवे**- (विष्णुलाई, विष्णुका लागि) 'विष्णो+ए' यस्तो स्थितिमा विष्णोको ओकारदेखि एको एकार अव्यवहित अच् पर भएको हुनाले "एचोऽयवायावः" ले विष्णोका ओकारका स्थानमा अय्, अव्, आय्, आव्, यी चारै आदेश पाएर अनियम भएकोले नियम गर्ने परिभाषा सूत्र "यथासंख्यमनुदेशः समानाम्" लगाएर स्थानी पनि- ए,ओ,ऐ,औ यी चार, आदेश पनि अय्, अव्, आय्, आव्, यी चार, हुनाले क्रमैले हुँदा स्थानीमा दोस्रो 'ओ'कारका स्थानमा, आदेशमा दोस्रो अव् आदेश भयो, 'विष्ण्+अव्+ए' भयो । वर्णसम्मेलन गर्दा 'विष्णवे' सिद्ध भयो ।

**नायकः**- (लैजानेवाला) 'नै+अकः' यस्तो स्थिति भएमा "एचोऽयवायावः" यो सूत्रले 'नै' को 'ऐ'कारका स्थानमा अय्, अव्, आय्, आव्, यी चारै आदेश पाएकोले अनियम भयो र नियम गर्ने परिभाषा सूत्र "यथासंख्यमनुदेशः समानाम्" लगाएर पूर्ववत् क्रमैले हुँदा स्थानीमा तेस्रो ऐकारको स्थानमा, आदेशमा तेस्रो आय् आदेश भयो- 'न्+आय्+अकः' भयो, वर्णसम्मेलन भयो 'नायकः' यो रूप सिद्ध भयो ।

**पावकः**- (पवित्र गर्नेवाला, आगो) 'पौ+अकः' यस्तो स्थितिमा "एचोऽयवायावः" यो सूत्रले पौका औकारका स्थानमा अय्, अव्, आय्, आव्, यी चारै आदेश पायो र अनियम भयो, पूर्ववत् "यथासंख्यमनुदेशः समानाम्" यो सूत्र लगाएर क्रमैले हुँदा स्थानीमा चौथो औकारको स्थानमा, आदेशमा चौथो आव् आदेश भयो, 'प्+आव्+अकः' भयो, वर्णसम्मेलन भयो, 'पावकः' यो रूप सिद्ध भयो ।

**अरू उदाहरण**

| | |
|---|---|
| शे+अनम्=शयनम् । (विछचौना) | ने+अयम्=नयनम् । (आँखा) |
| शे+आनः= शयानः । (सुतेको) | गै+अनः=गायनः । (गाउने व्यक्ति) |
| गै+अकः= गायकः । (गाउने व्यक्ति) | पो+अनः पवनः । (हावा) |
| भो+अनम्=भवनम् । (घर) | लो+अन= लवणः । (नून) |
| भौ+उक= भावुकः । (सहृदय) | धौ+अकः= धावकः । (दगुर्ने व्यक्ति) |

इत्यादि अय्, अव्, आय्, आव्, आदेश भएका उदाहरणको पनि ऊह गर्नू ।

**वान्तो यीति**- यकार आदिमा हुने प्रत्यय परभएमा ओकार र औकारका स्थानमा अव् आव् यी दुई आदेश होऊन्

**गव्यम्**- (गोर्विकारः= दूध दही घिऊ आदि)

'गो+यम्'यस्तो स्थिति भएमा यकार आदिमा हुने प्रत्यय यम्को यकार पर भएमा गकारोत्तरवर्ती ओकारका स्थानमा "वान्तो यि प्रत्यये" यो सूत्रले अव्, आव् दुवै आदेश पाएर अनियम भएकोले "यथासंख्यमनुदेशः समानाम्" यो सूत्र लगाएर क्रमैले हुँदा स्थानीमा पहिलो गोका ओकारका स्थानमा, आदेशमा पहिलो अव्आदेश भयो । 'ग्+अव्+यम्' भयो वर्णसम्मेलन भयो, 'गव्यम्' यो रूप सिद्ध भयो ।

**नाव्यम्**- (नावा तरणीयम्= नौकाले तर्न योग्य जल) 'नौ+यम्' यस्तो स्थितिमा यकारादिप्रत्यय

**वा.**(अध्वपरिमाणे च)। गव्यूतिः ॥

**२५.अदेङ् गुणः** १ । १ । २ ॥

अत् एङ् च गुणसंज्ञः स्यात् ।

**२६.तपरस्तत्कालस्य** १ । १ । ७० ॥

तः परो यस्मात्स च तात्परश्चोच्चार्यमाणसमकालस्यैव संज्ञा स्यात् ॥

**२७.आद्गुणः** ६ । १ । ८७ ॥

अवर्णादचि परे पूर्वपरयोरेको गुण आदेशः स्यात् । उपेन्द्रः । गङ्गोदकम् ॥

---

यम्को यकार पर भएमा "वान्तो यि प्रत्यये" यो सूत्रले अव्, आव् दुवै आदेश पायोर अनियम भयो । नियम गर्ने परिभाषा सूत्र "यथासंख्यमनुदेशः समानाम्" लगाएर क्रमैले हुँदा स्थानीमा दोस्रो 'नौ'का औकारका स्थानमा आदेशमा दोस्रो आव् आदेश भयो, 'न्+आव्+यम्' भयो, वर्णसम्मेलन भयो 'नाव्यम्' रूप सिद्ध भयो ।

**अध्वेति–** बाटाको इयत्तापरिच्छेदक अर्थ बुझिंदामा गो शब्दका स्थानमा वान्त अव् आदेश होस् यूति शब्द पर भएमा ।

**गव्यूतिः** (दुई कोश बाटो) 'गो+यूतिः' यस्तो स्थिति भएमा "अध्वपरिमाणे च" यो वार्तिकले गो का ओकारका स्थानमा अव्आदेश भयो 'ग्+अव्+यूतिः' भयो, वर्णमेलन भयो 'गव्यूतिः' यो रूप सिद्ध भयो ।

**अदेङिति–** ह्रस्व अकार र 'एङ्' प्रत्याहार अर्थात् ए, ओ पनि गुणसंज्ञक होऊन् ।

**तपर**[११] **इति–** तकार पर भएको स्वरवर्ण र तकारदेखि पररहेको शब्दद्वारा बोध्यवर्ण पनि उच्चार्यमाण वर्णले तुल्यकाल भएका स्वबोध्य अण्का सर्वणको मात्र संज्ञा (ग्राहक) होस् ।

**आदिति–** अवर्णदेखि अव्यवहित अच् पर भएमा पूर्व र परका स्थानमा गुणसंज्ञक एकादेश होस् ।

**उपेन्द्रः–**(विष्णु) 'उप+इन्द्रः', यस्तो स्थिति भएमा उपका अकारदेखि इन्द्रःको इकार अव्यवहित अच् परभएको हुनाले "आद्गुणः" यस सूत्रले पूर्वर पर अर्थात् 'अ'कार र 'इ'कारका स्थानमा गुणसंज्ञक एकादेश 'अ, ए, ओ' प्राप्त भएमा कसलाई विधान गर्ने ? कसलाई नगर्ने ? यो अनियम भयो र नियम गर्ने परिभाषा सूत्र "स्थानेऽन्तरतमः" लगाएर कण्ठस्थान भएको 'अ'कार र तालुस्थान भएको 'इ'कारका स्थानमा अतिशय तुल्य अर्थात् कण्ठस्थान र तालुस्थान भएको 'ए'कार एकादेश भयो, 'उप्+एन्द्रः' भयो, वर्णसम्मेलन भयो, 'उपेन्द्रः' यो रूप सिद्ध भयो ।

**गङ्गोदकम्–** (गङ्गाको जल) 'गङ्गा+उदकम्', यस्तो स्थिति भएमा 'गङ्गा'का आकारदेखि 'उदकम्'को उकार अव्यवहित अच् पर भएकोले 'आद्गुणः' भन्ने सूत्रले गुणसंज्ञक 'अ, ए, ओ,' एकादेश प्राप्त भएमा कुन विधान गर्ने ? कुन नगर्ने ? यस्तो अनियम भयो र नियम गर्ने परिभाषा सूत्र "स्थानेऽन्तरतमः" लगाएर स्थानीमा आकारको कण्ठस्थान र उकारको ओष्ठस्थान भएकोले त्यसको अतिशयतुल्य अर्थात् कण्ठ ओष्ठ स्थान भएको ओकार एकादेश भयो, 'गङ्ग्+ओदकम्', वर्णसम्मेलन भयो 'गङ्गोदकम्' सिद्ध भयो ।

---

११ "तपरस्तत्कालस्य" यो सूत्रमा 'तपरः' यो शब्दलाई दुवै प्रकारले व्याख्या गरिएको छ । सूत्रकारका विचारमा दुवै व्याख्या अभिप्रेत छन् । तः परो यस्मात्=तपरः, यो एक अर्थ । तात् पर=तपरः, यो अर्को अर्थ । सूत्रकारको अभिप्रायः अनुसार वृत्तिकारले अर्थ गर्नु भएको छ । "अदेङ् गुणः" वृद्धिरादैच् इत्यादि यसका उदाहरण हुन् । यी दुई सूत्रमा तकार पर भएको स्वरवर्ण अत्, आत्, यहाँ अ, आ, हुन् । तकारदेखि पर रहेको शब्द एङ्, ऐच् हुन् र तद्बोध्यवर्ण ए, ओ, ऐ, औ, क्रमशः छन् । तकार पर भएको हुनाले "अदेङ् गुणः" यहाँ अत् शब्दले ह्रस्व अकारको मात्र ग्रहण हुन्छ, दीर्घ र प्लुतको ग्रहण हुँदैन । "वृद्धिरादैच्" यहाँ आत् शब्दले दीर्घ आकारको मात्र ग्रहण हुन्छ, ह्रस्व र प्लुतको ग्रहण हुँदैन । त्यस्तै तकारदेखि पर रहेको हुनाले एङ् शब्दबोध्यवर्ण ए, ओ, र ऐच् शब्द बोध्य वर्ण ऐ, औ, दीर्घ मात्र ग्रहण गरिन्छन्, प्लुत लिइँदैनन् ।

**२८.उपदेशेऽजनुनासिक इत् १ । ३ । २ ॥**

उपदेशेऽनुनासिकोऽजित्संज्ञः स्यात् । प्रतिज्ञानुनासिक्याः पाणिनीयाः । लण्सूत्रस्थावर्णेन सहोच्चार्यमाणो रेफो रलयोः संज्ञा ॥

**२९.उरण् रपरः १ । १ । ५१ ॥**

ऋ इति त्रिंशतः संज्ञेत्युक्तम् । तत्स्थाने योऽण् स रपरः सन्नेव प्रवर्तते ।

---

**अरू उदाहरणहरू-**

नर+इन्द्रः= नरेन्द्रः । (राजा)
सुर+ईशः= सुरेशः । (इन्द्र)
राजा+इन्द्रः=राजेन्द्रः । (राजाहरूमा श्रेष्ठ)
तेन+उक्तम्= तेनोक्तम् । (उसले भनियो)
महा+उदयः= महोदयः । (ठूलो उदय भएको)
विद्या+उन्नतिः=विद्योन्नतिः । (विद्याको उन्नति)
दिन+ईशः= दिनेशः । (सूर्य)
महा+इन्द्रः= महेन्द्रः । (महेन्द्र)
सूर्य+उदयः= सूर्योदयः । (सूर्यको उदय)
भाग्य+उदयः= भाग्योदयः । (भाग्यको उदय)
आत्म+उन्नतिः=आत्मोन्नतिः । (आफ्नो उन्नति)
मया+उक्तम्= मयोक्तम् । (मैले भनियो)

**उपदेश इति-** उपदेशकालमा पढिएको अनुनासिक अच् इत्संज्ञक होस् ।

**प्रतिज्ञेति**[१२] – पाणिनिले बताइएका वर्णहरू व्यवहारले नै अनुनासिकत्व भाव जानिने हुन्छन् । लेख्दा अनुनासिक नभए पनि "लण्" सूत्रका बीचको अकार अनुनासिक छ, अर्थात् "लँण्" यस्तो छ भन्ने जानियो । त्यस्तै 'सु, औ, जस्', यहाँ 'सु' को उकार व्यवहारले अनुनासिक छ भन्ने जानियो, अर्थात् 'सुँ' यस्तो मानियो र उकारको इत्संज्ञा भयो र लोप भयो । त्यस्तै 'चिती संज्ञाने' यहाँ 'चिती' को अन्त्य ईकार अनुनासिक मानेर इत्संज्ञा भयो र लोप भयो । यस्तै अरू ठाउँमा पनि जहाँ जहाँ इत्संज्ञा गर्नुपर्छ त्यो अच् अनुनासिक छ भन्ने कुरा पाणिनीय व्याकरणमा व्यवहारबाट अवगत हुन्छ यसै कुरालाई वृत्तिकारले स्पष्ट गरेका छन् । [१३]'प्रतिज्ञानुनासिक्याः पाणिनीयाः' यस वाक्यद्वारा ।

**लणसूत्रेणेति-** लण् सूत्रका बीचमा पढिएका अवर्णले सँग उच्चारण गरिने रेफ- अर्थात् 'र' प्रत्याहार (रलयोः संज्ञा) रेफ र लकारको संज्ञा हुन्छ । अर्थात् "हयवरट्" यस सूत्रमा रहेको रेफ र "लण्" सूत्रका बीचमा रहेको अकार सहित 'र' प्रत्याहार सिद्ध हुन्छ, 'र' भन्नाले रेफ र लकार दुवै बुझिन्छन् ।

**रप्रत्याहारसिद्धि-**रप्रत्याहार साध्दा-लण्सूत्रका बीचको अकारलाई "उपदेशेऽजनुनासिक इत्" यो सूत्रले इत्संज्ञा भयो र "आदिरन्त्येन सहेता" यो सूत्र लगाएर अन्त्यको इत्संज्ञकवर्ण "लण्" सूत्रको अकारसहित उच्चारण गरिएको "हयवरट्" सूत्रको रेफ सँगै पढ्दा 'र' प्रत्याहार सिद्ध भयो, अर्थात् 'र' यो आफ्नो आदि रेफ र माझको लकार यी दुवैको संज्ञा भयो, 'र' को अन्तमा रहेको अकार उच्चारणार्थ हुनाले अनि "हयवरट्"को टकार र "लण्"को अकार इत्संज्ञक हुनाले ग्रहण भएन । यहाँ यो र प्रत्याहार साध्नको निमित्त "उपदेशेऽजनुनासिक इत्" यो सूत्र राखिएको हो । अन्यत्र इत्संज्ञा भएका वर्णको लोप पनि हुन्छ ।

**उरण् इति-** ऋ यो तीसवटाको संज्ञा हुन्छ भनेर माथि बताइयो । ऋकारका सवर्णका स्थानमा प्राप्त भएको जो अण् छ त्यो रेफ र लकार पर भएर मात्र प्रवृत्त हुन्छ ।

---

१२ पाणिनीयाः (पाणिनिप्रोक्ताः) वर्णाः, प्रतिज्ञा (व्यवहारः), अनुनासिक्यम् (अनुनासिकत्वधर्मः) येषां ते, तादृशा भवन्ति, इत्यर्थः ।

१३ प्रतिज्ञायते इति प्रतिज्ञा व्यवहारः, अनुनासिकस्य भावः आनुनासिक्यम्, प्रतिज्ञा आनुनासिक्यं येषां ते, प्रतिज्ञानुनासिक्याः । पाणिनिना प्रोक्ताः, पाणिनीयाः इति व्युत्पत्तिः ।

कृष्णर्द्धिः । तवल्कारः ॥

**३०.लोपः शाकल्यस्य ८ । ३ । १९ ॥**

अवर्णपूर्वयोः पदान्तयोर्यवयोर्लोपो वाऽशि परे ॥

**३१.पूर्वत्रासिद्धम् ८ । २ । १ ॥**

सपादसप्ताध्यायीं प्रति त्रिपाद्यसिद्धा, त्रिपाद्यामपि पूर्वं प्रति परं शास्त्रमसिद्धम् ।

---

**कृष्णर्द्धिः** (कृष्णको ऐश्वर्य) 'कृष्ण+ऋद्धिः' यस्तो स्थिति भएमा कृष्णका अकारदेखि ऋद्धिको ऋकार अव्यवहित अच् पर भएको हुनाले "आद्‌गुणः" यस सूत्रले अकार र ऋकारका स्थानमा 'गुण' भनेका अ,ए,ओ, पाएमा ऋकारका स्थानमा प्राप्त अण् 'अ' हुनाले "उरण् रपरः" यो सूत्र लगाएर अकारदेखि रेफ र लकार पर भएर प्रवृत्त हुँदा 'अर्,अल्,ए,ओ, यी सबै प्राप्त भए । "स्थानेऽन्तरतमः" यो परिभाषा सूत्र लगाएर कण्ठमूर्धस्थानी अकार र ऋकारका स्थानमा, स्थानले अतिशय तुल्य कण्ठ स्थान र मूर्धा स्थान भएको 'अर्'आदेश भयो 'कृष्ण्+अर्+द्धिः' भयो वर्णसम्मेलन गर्दा 'कृष्णर्द्धिः' रूप सिद्ध भयो । यहाँ जलतुम्बिकान्यायले रेफ शिरमा [१४] रह्यो ।

प्रकृत सूत्र "उरण् रपरः" मा पल्लो णकार नलिइने हुनाले अण् प्रत्याहारभित्र ए, ओ पर्दैनन् । अतः ए, ओ देखि पर रेफ लकारको प्रवृत्ति हुँदैन ।

**तवल्कारः** (तिम्रो लृकार) 'तव+लृकारः' यस्तो स्थितिमा तवका अकारदेखि लृकारको लृ अच् पर भएमा "उरण् रपरः" सूत्रको सहयोगपूर्वक "आद्‌गुणः" यो सूत्रले 'गुण' भनेका अर्, अल्, ए, ओ, यी सबै पाएमा "स्थानेऽन्तरतमः" यो सूत्र लगाएर कण्ठस्थान भएको अकार र दन्तस्थान भएको लृकारको स्थानमा, स्थानले अतिशयतुल्य कण्ठस्थान र दन्तस्थान भएको 'अल्'आदेश भयो, वर्णसम्मेलन गर्दा 'तवल्कारः' रूप सिद्ध भयो ।

**अन्य उदाहरण-**

| | | |
|---|---|---|
| सप्त+ऋषयः | = | सप्तर्षयः (कश्यप, अत्रि आदि सातऋषिहरू) |
| ब्रह्मा+ऋषिः | = | ब्रह्मर्षिः (ब्राह्मण ऋषि वसिष्ठ, याज्ञवल्क्य आदि) |
| देव+ऋषिः | = | देवर्षिः (नारद, पर्वत आदि) |
| राजा+ऋषिः | = | राजर्षिः (जनक, विश्वामित्र आदि) |
| महा+ऋषिः | = | महर्षिः (व्यास, वाल्मीकि आदि) |
| ग्रीष्म+ऋतुः | = | ग्रीष्मर्तुः (ग्रीष्म ऋतु/ज्येष्ठ, आषाढ महीना) । |
| वसन्त+ऋतुः | = | वसन्तर्तुः (वसन्त ऋतु/चैत, वैशाख महीना) |

यस्तै अरू उदाहरण पनि खोज्नू ।

**लोप इति-** अवर्ण पूर्वमा हुने पदान्त यकार वकारको लोप होस्, अश् प्रत्याहार पर भएमा ।

**पूर्वत्रेति-** पाउले सहित भएको सप्ताध्यायीका दृष्टिमा अर्थात् अष्टाध्यायी सूत्रपाठमा प्रथमाध्यायको पहिलो सूत्र १।१।१ देखि अष्टम अध्यायको पहिलो पाउको अन्तिम सूत्र ८।१।७४सम्मका सूत्रको दृष्टिमा, त्रिपादी– अर्थात् अष्टम अध्याय का द्वितीय, तृतीय, चतुर्थ (२, ३,४) पाउको सूत्र असिद्ध हुन्छ । त्रिपादीमा पनि पूर्व शास्त्रका दृष्टिमा परशास्त्र असिद्ध हुन्छ । पाणिनि मुनिले बनाएको अष्टाध्यायीसूत्रपाठ छ । त्यसमा प्रत्येक अध्यायमा चार-चार पाउ छन् । त्यसमा पहिलेका सात अध्याय र आठौं अध्यायको पहिलो पाउलाई सपादसप्ताध्यायी भनिन्छ । बाँकी

---

१४ "जलतुम्बिकान्यायेन रेफस्योर्ध्वगमनम्" इति समग्रं न्यायस्वरूपम् ।

हर इह, हरयिह । विष्ण इह, विष्णविह ॥

**३२. वृद्धिरादैच् १ । १ । १ ॥**

आदैच्च वृद्धिसंज्ञः स्यात् ॥

**३३. वृद्धिरेचि ६ । १ । ८८ ॥**

आदेचि परे वृद्धिरेकादेशः स्यात् । गुणापवादः ।

---

आठौं अध्यायका दोस्रो, तेस्रो र चौथो पाउ, यिनलाई त्रिपादी भनिन्छ । सपादसप्ताध्यायी सूत्रका दृष्टिमा त्रिपादी सूत्र असिद्ध हुन्छ भनेको, सपादसप्ताध्यायी कुनै सूत्रले पनि त्रिपादीसूत्रले गरेको काम देख्दैन । दुवैको विरोध भए सपादीसूत्र सबल हुन्छ । त्रिपादीमा पनि पूर्वशास्त्रका दृष्टिमा परशास्त्र असिद्ध हुन्छ भनेको, परशास्त्रले गरेको पूर्वशास्त्रले देख्दैन, दुवैको विरोध भएमा पूर्वशास्त्र सबल हुन्छ, त्यसलाई बाध्छ भनेको हो । यस ग्रन्थमा जति सूत्र छन् । ती अष्टाध्यायीसूत्रपाठबाट लिइएका हुन् । सूत्रदेखि परतिर रहेका अङ्कले अष्टाध्यायीसूत्रपाठको अध्याय, पाउ र सूत्राङ्कको संकेत गर्दछन् ।

**हर इह/हरयिह-** (हरि ! यहाँ आउनुहोस्) । **विष्ण इह/विष्णविह-** (विष्णु ! यहाँ आउनुहोस्) 'हरे+इह', 'विष्णो+इह' यस्तो स्थिति भएमा, "एचोऽयवायावः" यस सूत्रले अय्, अव्, आय्, आव् यी चारै आदेश पाएकोमा "यथासंख्यमनुदेशः समानाम्" यो सूत्रले ए,ओ,ऐ,औ, यी चारका स्थानमा क्रमैले अय्, अव्, आय्, आव् हुने नियम गरेकोले 'हरे' का एकारका स्थानमा अय्आदेश र 'विष्णो'का ओकारका स्थानमा अव्आदेश भयो र 'हरय्+इह' 'विष्णव्+इह' यस्तो भयो, भएपछि अवर्णपूर्वमा हुने पदान्त 'हरय्' को यकार र 'विष्णव्' का वकारको, इहको इकार 'अश्' पर भएकोले "लोपः शाकल्यस्य"ले विकल्पले लोप भयो, 'हर+इह', 'विष्ण+इह' यस्तो भयो, यहाँ 'हर' का अकारदेखि 'इह' को इकार "विष्ण"का अकारदेखि 'इह' को इकार अव्यहित अच् पर हुनाले "आद् गुणः" यससूत्रले गुण पाएकोमा "पूर्वत्रासिद्धम्" यो सूत्र लगाएर 'आद् गुणः' का दृष्टिमा "लोपः शाकल्यस्य" यो सूत्र असिद्ध भएकोले यकार वकारको लोप भएको नमानेर 'हरय् इह', 'विष्णव् इह' यस्तै देखेको हुनाले गुण भएन, 'हर इह', 'विष्ण इह' यस्तै रह्यो, यी दुई रूप भए । "लोपः शाकल्यस्य"ले यकारको लोप नभएको पक्षमा यकार वकार इकारमा लाग्न गएपछि 'हरयिह', 'विष्णविह' यी दुई रूप भए ।

**अन्य उदाहरणहरू–**

ते+आगता = त आगताः/तयागताः (तिनीहरू आए) ।
श्रियै+उद्यतः = श्रिया उद्यत/श्रियायुद्यतः (ऐश्वर्यको निमित्त तत्पर) ।
तस्मै+अदात् = तस्मा अदात्/तस्मायदात् (त्यसलाई दियो) ।
विधौ+उदिते = विधा उदिते /विधावुदिते (चन्द्रमा उदाएपछि) ।
वने+ऋषय = वन ऋषयः/वनयृषयः (वनमा ऋषिहरू) ।

**वृद्धिरादिति–** दीर्घ आकार र ऐ, औ वृद्धिसंज्ञक होऊन् ।

**वृद्धिरेचीति–** अवर्णदेखि एच् पर भएमा पूर्व र परका स्थानमा वृद्धिसंज्ञक एकादेश होस् ।[१५] यो गुणको अपवाद हो । अर्थात् "आद् गुणः" यो सूत्रको बाधक हो ।

---

१५ "निरवकाशो विधिरपवादः, स च सावकाशं बाधते" अवकाश नभएको विधि अपवाद हो । त्यसले सावकाश विधिलाई बाध्दछ । जहाँ जहाँ "वृद्धि रेचि"ले वृद्धि पाउँछ, त्यहाँ त्यहाँ "आद् गुणः" ले गुण पाउँछ । अतः गुणलाई नबाधेसम्म वृद्धिको अवसर नै छैन, त्यसो हुनाले वृद्धि निरवकाश विधि छ । गुण सावकाश छ, अतः "वृद्धिरेचि"ले वृद्धि पाउने ठाउँमा "आद् गुणः"लाई बाध्दछ भन्ने तात्पर्य हो ।

कृष्णैकत्वम् । गङ्गौघः । देवैश्वर्यम् । कृष्णौत्कण्ठचम् ॥

**३४.एत्येधत्यूठ्सु ६ । १ । ८९ ॥**

अवर्णादेजाद्योरेत्येधत्योरूठि च परे वृद्धिरेकादेशः स्यात् । उपैति ।

---

**कृष्णैकत्वम्-** (कृष्णको एकता ।) 'कृष्ण+एकत्वम्' यस्तो स्थितिमा 'कृष्ण'का अकारदेखि 'एकत्वम्'को 'ए'कार पर भएमा "आद् गुणः"ले गुण पायो त्यसलाई बाँधेर "वृद्धिरेचि"ले पूर्व र पर 'कृष्ण'को अकार र 'एकत्वम्'को एकारका स्थानमा वृद्धि एकादेश आ, ऐ, औ, पायो कुनलाई विधान गर्ने ? कुनलाई विधान नगर्ने ? यस्तो अनियम भएकोले नियम गर्ने परिभाषा सूत्र "स्थानेऽन्तरतमः" लगाएर आ, ऐ, औ मध्ये अकार र एकारको स्थानले अतिशयतुल्य कण्ठतालुस्थानीय ऐकार आदेश भयो । 'कृष्ण्+ऐकत्वम्', वर्णसम्मेलन भयो- 'कृष्णैकत्वम्' सिद्ध भयो ।

**गङ्गौघः** (गङ्गाको प्रवाह ।) 'गङ्गा+ओघः' यस्तो स्थिति भएमा गङ्गाका आकारदेखि ओघः,को ओकार पर भएमा "आद् गुणः"ले गुण पायो त्यसलाई बाधेर "वृद्धिरेचि"ले पूर्व र पर- 'गङ्गा'को आकार र 'ओघः'को ओकारका स्थानमा वृद्धि एकादेश आ,ऐ,औ, यी सबै पायो, अनियम भयो र नियम गर्ने परिभाषा सूत्र "स्थानेऽन्तरतमः" लगाएर आ,ऐ,औ, यी तीन वर्णमा आन्तरतम्यले कण्ठस्थानी आकार र कण्ठ र ओष्ठस्थान भएको ओकारका स्थानमा कण्ठ र ओष्ठस्थान भएको औकार एक आदेश भयो वर्णसम्मेलन भयो, 'गङ्गौघः' यो रूप सिद्ध भयो ।

**देवैश्वर्यम्** (देवताहरूको ऐश्वर्य ।) 'देव+ऐश्वर्यम्' यस्तो स्थिति भएमा देवका अकारदेखि ऐश्वर्यम्,को ऐकार एच् पर भएको हुनाले दुवैका स्थानमा उक्त सूत्रले वृद्धि एकादेश आ, ऐ, औ प्राप्त भएमा, पूर्ववत् "स्थानेऽन्तरतमः" यो सूत्र लगाएर आन्तरतम्यले कण्ठतालुस्थानीय अकार र ऐकारका स्थानमा कण्ठतालुस्थानीय ऐकार एकादेश भयो, वर्णसम्मेलन गर्दा 'देवैश्वर्यम्' रूप सिद्ध भयो ।

**कृष्णौत्कण्ठचम् (कृष्णसम्बन्धी उत्कण्ठा ।)**- 'कृष्ण+औत्कण्ठचम्' यस्तो स्थिति भएमा "आद् गुणः"ले गुण पायो त्यसलाई बाधेर कृष्णको 'अ'कार र औत्कण्ठयम्को 'औ'कार दुवैका स्थानमा "वृद्धिरेचि"ले वृद्धि एकादेश आ, ऐ, औ, पायो पूर्ववत् "स्थानेऽन्तरमः" यो सूत्र लगाएर आन्तरतम्यले कण्ठस्थानी 'कृष्ण'को अकार र कण्ठओष्ठस्थानी 'औत्कण्ठचम्'का औकारका स्थानमा कण्ठओष्ठस्थानी औकार एकादेश भयो, वर्णसम्मेलन भयो 'कृष्णौत्कण्ठचम्' सिद्ध भयो ।

**अरू उदाहरणहरू-**

पञ्च+एते = पञ्चैते (यी पाँच) ।

जन+एकता = जनैकता (मानिसको एकता) ।

मत+ऐक्यम् = मतैक्यम् (एकै मत हुनु) ।

स्थूल+एणः = स्थूलैणः (मोटो मृग) ।

महा+एनः = महैनः (ठूलो पाप) ।

मा+एवम् = मैवम् (यसो हैन) ।

तस्य+औदार्यम् = तस्यौदार्यम् (त्यसको उदारता) ।

तस्य+औचिती = तस्यौचिती (त्यसको औचित्य) ।

दर्शन+औत्सुक्यम् = दर्शनौत्सुक्यम् (देख्ने उत्कण्ठा) ।

**एत्येधत्यूठिति-** अवर्णदेखि एच् आदिमा हुने इण् धातु एध् धातु पर भएमा र ऊठ् पर भएमा पनि पूर्व र परका स्थानमा वृद्धि एकादेश होस् । यो पररूप र गुणको अपवाद हो । 'उप+एति', 'उप+एधते' यहाँ "एङि पररूपम्" ले पररूप प्राप्त छ । 'प्रष्ठ+ऊहः' यहाँ "आद् गुणः"ले गुण प्राप्त छ यो सूत्र ती दुवैको अपवाद अर्थात् बाधक हो ।

उपैधते । प्रष्ठौहः । एजाद्योः किम् ! उपेतः । मा भवान्प्रेदिधत् ।
**वा.**(अक्षादूहिन्यामुपसंख्यानम्) ।

---

**उपैति-** (नजीक आउँछ ।) 'उप+एति' यस्तो स्थिति भएमा 'उप'का 'अ'कार 'अ'वर्णदेखि "एति" "एच्" आदिमा हुने इण् धातु पररहेको हुनाले "एङि पररूपम्"लाई बाधेर "एत्येधत्यूठ्सु"ले पूर्व र पर अकार र एकारका स्थानमा वृद्धि- एकादेश "आ, ऐ, औ" सबै पायो, "स्थानेऽन्तरतमः" यो सूत्र लगाएर अकार र एकारका स्थानमा स्थानले अतिशय तुल्य कण्ठ र तालुस्थान भएको 'ऐ'कार एकादेश भयो वर्णसम्मेलन गर्दा 'उपैति' रूप सिद्ध भयो ।

**उपैधते-** (नजीकमा बढ्छ) 'उप+एधते' यस्तो स्थितिमा उपको (पकारोत्तरवर्ती) अकार अवर्णदेखि 'एधते' यहाँ एच् आदिमा हुने 'एध्' धातु पर हुनाले 'एङि पररूपम्' लाई बाँधेर 'एत्येधत्यूठ्सु'ले पूर्व र पर उपको अकार र 'एधते'को एकारका स्थानमा वृद्धिसंज्ञक एकादेश 'आ, ऐ, औ,' पाएमा "स्थानेऽन्तरतमः" यो सूत्र लगाएर आन्तरतम्यले दुवैको स्थानमा, स्थानले अतिशयतुल्य कण्ठतालुस्थानी ऐकार एकादेश भयो, वर्णसम्मेलन गर्दा 'उपैधते' रूप सिद्ध भयो ।

**प्रष्ठौहः-** (दाउन लागेको गोरुको) 'प्रष्ठ+ऊहः' यस्तो स्थिति भएमा 'प्रष्ठ'को ठकारोत्तरवर्ती 'अ'कारदेखि 'ऊहः'को 'ऊ'कार ऊठ् पर छ, किनकि - 'वाह ऊठ्' यस सूत्रले वाका 'व'कारका स्थानमा 'ऊठ्' आदेश भएर ऊह भएको हो र "एत्येधत्यूठ्सु" यस सूत्रले पूर्व र पर अकार र ऊकारका स्थानमा 'आ, ऐ, औ,' पाएमा "स्थानेऽन्तरतमः" यो सूत्र लगाएर स्थानी 'अ'कार र 'ऊ'कारको स्थानले अतिशय तुल्य 'कण्ठ-ओष्ठस्थानीय' 'औ'कार एकादेश भयो, वर्णसम्मेलन गर्दा 'प्रष्ठौहः' रूप सिद्ध भयो ।

**एजाद्योःकिमिति-** यो सूत्रमा एजाद्योः किन भन्नु पर्‍यो ? यस प्रश्नको उत्तरमा उपेतः, मा भवान् प्रेदिधत्, यी दुई प्रत्युदाहरणहरू छन् । यी दुवै प्रत्युदाहरणमा एच् आदिमा हुने इण् धातुर एध् धातु पर नहुनाले एत्येधत्यूठ्सु लाग्दैन । जुन प्रयोगमा सूत्र लाग्दछन् ती उदाहरण हुन् । कहीं कहीं सूत्र अथवा वृत्तिमा रहेका पदको प्रयोजन खुलस्त गर्न किम् शब्दद्वारा प्रश्न गरेर उत्तरका रूपमा प्रयोग दिइएका छन्, ती प्रत्युदाहरण हुन् । यहाँ 'उपेतः' (नजीकमा गएको) 'मा भवान् प्रेदिधत्' (तपाई अधिक नबढ्नुहोस्), दुई प्रत्युदाहरण छन् ।

**एजाद्योः किमिति-** एजाद्योः किम् "एत्येधत्यूठ्सु" यस सूत्रको वृत्तिमा "एजाद्योः" यो पद किन पढ्नु ? नपढ्ने हो भने सूत्रको अर्थ- 'अवर्णदेखि इण् धातु र एध् धातु पर भएमा र ऊठ् पर भएमा पनि वृद्धि होस्' यस्तो होला, यस्तो अर्थ भएपछि 'उप+इतः', 'मा भवान् प्र+इदिधत्' यहाँ 'उप'को अकारदेखि पर 'इतः' मा इण् धातु र, 'मा भवान् प्र' का अकारदेखि पर 'इदिधत्'मा एध् धातु हुनाले यो सूत्रले वृद्धि पाउला, यहाँ वृद्धि नहोस् भन्ने विचारले "एजाद्योः" यो पद वृत्तिमा पढियो, तब 'एच् आदिमा हुने इण् धातु एध् धातु पर भएमा' भन्ने अर्थ भयो, अब 'इतः', 'इदिधत्' यहाँ एच् आदिमा हुने इण् धातु एध् धातु पर छैनन्, इकार आदिमा हुने इण् धातु एध् धातु पर छन् र वृद्धि भएन, 'आद् गुणः'ले गुण भयो, 'उपेतः', 'मा भवान्प्रेदिधत्' । यी रूप सिद्ध भए ।

**अरू उदाहरणः** अव+एति= अवैति । (जान्दछ)    अप+एति=अपैति । (टाढा जान्छ)
प्र+एति=प्रैति । (मर्दछ)    अव+एधते=अवैधते । (बढ्छ)
विश्व+ऊहः=विश्वौहः । (विश्व धारण गर्नेवाला भगवान्को)

**(वा.) अक्षेति-** अक्षशब्दको अवयव अवर्णदेखि ऊहिनी शब्दको अवयव अच् पर भएमा पूर्व र परका स्थानमा वृद्धि एकादेश होस् ।

अक्षौहिणी सेना । **वा**.(प्रादूहोढोढ्येषैष्येषु) । प्रौहः । प्रौढः । प्रौढिः । प्रैषः । प्रैष्यः । **वा**. (ऋते च तृतीयासमासे) । सुखेन ऋतः सुखार्तः ।

---

[१६] **अक्षौहिणी-** अक्षाणां शकटानां लक्षणया रथानामूहः समूहो यस्यां सा अक्षौहिणी (अक्षौहिणी नामक सेना विशेष) 'अक्ष+ऊहिनी' यस्तो स्थिति भएमा 'आद् गुणः'ले पाएको गुणलाई बाधेर 'अक्ष'का 'अ'कारदेखि 'ऊहिनी'को 'ऊ'कार पर भएमा "अक्षादूहिन्यामुपसङ्ख्यानम्" यस वार्तिकले पूर्व र पर 'अ' र 'ऊ' का स्थानमा वृद्धिसंज्ञक एकादेश आ, ऐ, औ, पाएमा "स्थानेऽन्तरतमः" यो सूत्र लगाएर कण्ठ ओष्ठस्थानीय अकार ऊकारका स्थानमा स्थानले अतिशय तुल्य कण्ठओष्ठस्थानीय 'औ'कार एकादेश भयो 'अक्षौहिनी' भयो "पूर्वपदात्संज्ञायामगः" यो सूत्रले णत्व भयो 'अक्षौहिणी' यो रूप सिद्ध भयो ।

(वा.) **प्रादूहेति-** प्र. शब्दको अवयव अवर्णदेखि ऊह, ऊढ, ऊढि, एष, एष्य, यी शब्दको अवयव अच् पर भएमा पूर्व र परका स्थानमा वृद्धि एकादेश होस् भन्नु । 'प्र+ऊहः', 'प्र+ऊढः', 'प्र+ऊढिः', 'प्र+एषः', 'प्र+एष्यः' यस्तो स्थितिमा, **'प्र+ऊहः'**, 'प्र+ऊढः', 'प्र+ऊढिः' यी तीन ठाउँमा "आद् गुणः"ले गुण पाएको, र 'प्र+एषः', 'प्र+एष्यः' यी दुई ठाउँमा "एङि पररूपम्"ले पररूप पाएको थियो, ती दुवैलाई बाँधेर "प्रादूहोढोढ्येषैष्येषु" यस वार्तिकले पूर्व र परका स्थानमा वृद्धि एकादेश आ, ऐ, औ पाएकोमा "स्थानेऽन्तरतमः" यो सूत्र लगाएर वृद्धि हुँदा पहिलेका तीन ठाउँमा स्थानी अकार ऊकारको स्थानले अतिशय तुल्य कण्ठस्थान र ओष्ठस्थान भएको औकार र पछिल्ला दुई ठाउँमा स्थानी अकार र एकारको अतिशय तुल्य कण्ठस्थान र तालुस्थान भएको ऐकार एकादेश भयो, 'प्रौहः', 'प्रौढः', 'प्रौढिः', 'प्रैषः', 'प्रैष्यः', यी पाँच रूप सिद्ध भए ।

प्रौहः (उत्कृष्ट तर्क) । प्रौढः (बलियो) । प्रौढिः (दरिलो तर्क) ।
प्रैषः (प्रेरणा) । प्रैष्यः (नोकर) ।

(वा.) **ऋते चेति-** अवर्णदेखि ऋतशब्दको अवयव अच् पर भएमा पूर्व र परका स्थानमा वृद्धि एकादेश होस् तृतीयासमास छ भने ।

**सुखार्तः-** सुखेन ऋतः (सुखले छोडिएको) यस विग्रहमा 'सुख+ऋतः' यहाँ "आद् गुणः"ले पाएको गुणलाई बाँधेर "ऋते च तृतीयासमासे" यो वार्तिकले "उरण् रपरः" सूत्र लगाएर आर्, आल्, ऐ, औ, पाएकोमा "स्थानेऽन्तरतमः" यो सूत्र लगाएर सुखको अकार र ऋतःको ऋकारका

---

१६ "एकेभैकरथा त्र्यश्वा पत्तिः पञ्चपदातिका । पत्त्यङ्गैस्त्रिगुणैः सर्वैः क्रमादाख्या यथोत्तरम् ॥ सेनामुखं, गुल्मगणौ, वाहिनी, पृतना, चमूः, । अनीकिनी, दशानीकिन्यक्षौहिणी... ॥" (अमरकोश)
यस पद्य अनुसार पत्ति आदि सेनाको स्वरूप-

| हात्ती | रथ | घोडा | पैदल सेना | |
|---|---|---|---|---|
| १ | १ | ३ | ५ | पत्ति |
| ३ | ३ | ९ | १५ | सेनामुख |
| ९ | ९ | २७ | ४५ | गुल्म |
| २७ | २७ | ८१ | १३५ | गण |
| ८१ | ८१ | २४३ | ४०५ | वाहिनी |
| २४३ | २४३ | ७२९ | १२१५ | पृतना |
| ७२९ | ७२९ | २१८७ | ३६४५ | चमू |
| २१८७ | २१८७ | ६५६१ | १०९३५ | अनीकिनी |
| २१८७० | | २१८७० | ६५६१० | १०९३५० दशानीकिनी (अक्षौहिणी) |

तृतीयेति किम् ! परमर्तः । **वा**.(प्रवत्सतरकम्वलवसनार्णदशानामृणे) । प्रार्णम्, वत्सतरार्णम् इत्यादि ॥

**३५. उपसर्गाः क्रियायोगे १ । ४ । ५९ ॥**

प्रादयः क्रियायोगे उपसर्गसंज्ञाः स्युः । प्र परा अप सम् अनु अव निस् निर् दुस्

---

स्थानमा स्थानले अतिशय तुल्य कण्ठस्थान र मूर्धा स्थान भएको आर् आदेश भयो 'सुख्+आर्त' भयो वर्णसम्मेलन भयो सुखार्तः सिद्ध भयो । 'सुखेन+ऋतः' भन्दा यहाँ तृतीया समास छ ।

**तृतीयेति किमिति-** तृतीयेति किम् ? ऋते च तृतीयसमासे भन्ने वार्तिकमा तृतीया किन भनेको ? परमर्तः यहाँ वृद्धि नहोस् भन्ने अभिप्रायले । परमर्तः यो प्रत्युदाहरण हो । परमर्तः (अत्यन्त छोडिएको) ।

तृतीयेति किम् ? "ऋते च तृतीयासमासे" भन्ने वार्तिकमा तृतीया किन भन्नु ? "तृतीया" पद हटाएपछि वार्तिक "ऋते च समासे" यस्तो होला । यसको अर्थ होला 'अवर्णदेखि ऋत शब्दको अवयव अच् पर भएमा पूर्व र परका स्थानमा वृद्धि एकादेश होस् समासमा', यस्तो अर्थ भएपछि 'परम+ऋतः' यहाँ "आद् गुणः"लाई बाँधेर वृद्धि भएर 'परमार्तः' यस्तो अनिष्ट रूप सिद्ध होला, सो नहोस् भनेर वार्तिकमा 'तृतीया' पदराखेको हो 'तृतीया' यो पद राखेपछि तृतीयासमासमा भन्ने अर्थ भयो । परमश्चासौ ऋतः='परम+ऋतः' यहाँ तृतीयासमास छैन, कर्मधारय समास छ अतः यो वार्तिकले वृद्धि भएन, "आद्गुणः"ले गुण भयो 'परमर्तः' सिद्ध भयो ।

काशिका वृत्तिमा 'समासे इति किम् ? 'सुखेनर्तः' यो प्रत्युदाहरण पनि छ ।

**(वा.) प्रवत्सरेति-** प्र. शब्द, वत्सतर शब्द, कम्बल शब्द, वसन शब्द, ऋण शब्द, दश शब्दको अवयव अवर्णदेखि ऋण शब्दको अवयव अच् पर भएमा पूर्व र परका स्थानमा वृद्धि एकादेश होस् ।

**प्रकृष्टं** च तदृणम्= प्रार्णम् (अधिक ऋण) वत्सतरस्य ऋणम्=वत्सतरार्णम् (बाच्छाको ऋण)
**कम्बलस्य** ऋणम्=कम्बलार्णम् (काम्लोको ऋण) वसनस्य ऋणम्=वसनार्णम् (कपडाको ऋण)

ऋणस्य ऋणम्=ऋणार्णम् (ऋण तिर्नको लागि लिइएको ऋण) दशऋणानि (जलानि) सन्ति यस्मिन्स दशार्णो देशः=दशैतिर जल भएको अनूपदेशविशेष दशार्ण हो । यसमा "ऋणं देये जले दुर्गे" यो "हैमनाममाला" कोशमा ऋण शब्दको जल अर्थ भएको प्रमाण छ । जल अर्थमा ऋण शब्द "ऋणु गतौ" धातुबाट "इगुपधज्ञाप्रीकिरः कः"ले क प्रत्यय गरेर सिद्ध हुन्छ "ऋणमाधमर्ण्ये" सूत्रले सिद्ध गरेको ऋण शब्दको अर्थ 'दशार्ण' शब्दमा मिल्दैन ।

**प्रार्णम्, वत्सतरार्णम्, कम्बलार्णम्, वसनार्णम्, ऋणार्णम्, दशार्णः-** प्र+ऋणम्, वत्सतर+ऋणम्, कम्वल+ऋणम्, वसन+ऋणम्, ऋण+ऋणम् दश+ऋणः, । यस्तो स्थितिमा "आद्गुणः" यस सूत्रलाई बाँधेर "प्रवत्सतरकम्बलवसनार्णदशानामृणे" यस वार्तिकले "उरण् रपरः" यो सूत्र लगाएर वृद्धि भनेका आर्, आल्, ऐ, औ, पाएकोमा "स्थानेऽन्तरतमः" यो सूत्र लगाएर कण्ठस्थान र मूर्धास्थान भएका अकार र ऋकारका स्थानमा सर्वत्र कण्ठस्थान र मूर्धा स्थान भएको 'आर्' आदेश भयो, वर्णमेलन भयो, 'प्रार्णम्', 'वत्सतरार्णम्', 'कम्बलार्णम्', 'वसनार्णम्', 'ऋणार्णम्', 'दशार्णः', यी रूप सिद्ध भए ।

वत्सतर, कम्वल, वसन, ऋण, यी चार शब्दमा "तादर्थ्ये चतुर्थी वाच्या" यस वार्तिकले चतुर्थी पनि हुन्छ । अतः वत्सतराय ऋणम्, कम्बलाय ऋणम्, वसनाय ऋणम्, ऋणाय ऋणम्, यस्तो विग्रह पनि हुन्छ ।

**उपसर्गा इति-** प्रादिहरू क्रियाका योगमा उपसर्गसंज्ञक होऊन् । प्र, परा, अप, सम्, अनु, अव, निस्, निर्, दुस्, दुर्, वि, आङ्, नि, अधि, अपि, अति, सु, उद्, अभि, प्रति, परि, उप यी २२ प्रादि

दुर् वि आङ् नि अधि अपि अति सु उत् अभि प्रति परि उप-एते प्रादयः ॥

**३६.भूवादयो धातवः १ । ३ । १ ॥**

क्रियावाचिनो भ्वादयो धातुसंज्ञाः स्युः ॥

**३७.उपसर्गादृति धातौ ६ । १ । ९१ ॥**

अवर्णान्तादुपसर्गादृकारादौ धातौ परे वृद्धिरेकादेशः स्यात् । प्रार्च्छति ॥

---

हुन् । "उपसर्गाः क्रियायोगे" यो संज्ञासूत्र हो । "उपसर्गादृति धातौ" यो आगामी सूत्रमा उपसर्ग शब्द आएको छ । उपसर्ग के हो त ? भन्ने बुझाउन यो सूत्र पहिले लेखियो । त्यही सूत्रमा धातुशब्द पनि आएको छ । धातुशब्दको अर्थ बुझाउन "भूवादयो धातवः" यो सूत्र लेखियो ।

[१७]**भूवेति**- क्रियावाचक भू आदि धातुसंज्ञक होऊन् । सूत्रमा "भूवादयः" यस्तो र वृत्तिमा "क्रियावाचिनो भ्वादयः" यो कसरी भयो ? 'भूवादयः' यो पदको विग्रह - 'भूश्च वाश्च भूवौ, आदिश्च आदिश्च आदी, भूवौ आदी येषां ते भूवादयः' यस्तो हुन्छ । यहाँ पहिलो आदिशब्दको प्रभृति अर्थ र दोस्रो आदिशब्दको सादृश्य अर्थ हुन्छ र 'भूवादयः' यो पदको निष्कृष्ट अर्थ 'भू' आदि गरिएका 'वा' जस्ता भन्ने हुन्छ । यस्तो अर्थ भएपछि भू आदि गरिएका भन्नाले 'भू आदि धातुपाठमा पढिएका' भन्ने र 'वा' जस्ता भन्नाले 'क्रियावाची' भन्ने अर्थ आउँछ । यही अर्थ संझाउन वृत्तिमा 'क्रियावाचिनो भ्वादयः' यस्तो लेखिएको छ अतः धातुपाठमा लेखिएका 'भू' 'वा' आदि क्रियावाचक भएमा मात्र धातुसंज्ञक हुन्छन् । अरू अर्थ भएमा धातुसंज्ञक हुँदैनन् । जस्तै 'भू' यो पृथिवीवाचक शब्द र 'वा' यो विकल्पवाचक शब्द धातुसंज्ञक हुँदैन । यस्तै अरू धातुमा पनि जान्नु ।

धातुपाठमा सवैभन्दा अगाडि भ्वादिमा भू धातु छ अदादिको बीचमा वा धातु छ । नजीकैका अरू धातु न लिएर वा धातु नै किन लिइएको हो ? । 'भू' यसको अर्को अर्थ पृथिवी भए झैं 'वा' यसको अर्को अर्थ विकल्प छ भन्ने देखाउन सुगम- 'वा' धातु भएकोले 'भू' धातुसँग 'वा' धातु लिइएको हो ।

**उपसर्गादृतीति**- अवर्णान्त उपसर्गदेखि ऋकार आदिमा हुने धातु पर भएमा पूर्व र परका स्थानमा वृद्धिसंज्ञक एकादेश होस् ।

**प्रार्च्छति** (अत्यन्त हिँड्छ) 'प्र+ऋच्छति' यस्तो स्थिति भएमा 'ऋच्छति' यस क्रियाका योगमा 'प्र'लाई "उपसर्गाः क्रियायोगे" यो सूत्रले उपसर्गसंज्ञा भयो । ऋच्छ यसलाई "भूवादयो धातवः" यस सूत्रले धातुसंज्ञा भयो, अनि "आद्गुणः"लाई बाधेर "उपसर्गादृति धातौ"ले अवर्णान्त उपसर्ग 'प्र' देखि ऋकारादिमा हुने धातु 'ऋच्छ'पर भएको हुनाले पूर्व 'प्र' को अकार र पर ऋच्छतिको ऋकारका स्थानमा "उरण् रपरः" लाएर वृद्धि भनेका आर्, आल्, ऐ, औ, सवै पाएमा 'स्थानेऽन्तरतमः' लगाएरर स्थानी 'प्र' को अकार र 'ऋच्छति'को ऋकारको स्थानमा स्थानले अतिशय तुल्य कण्ठमूर्धस्थानी आर् आदेश भयो "प्रार्च्छति" यो रूप सिद्ध भयो ।

---

१७ 'भूश्च वाश्च भूवाविति द्वन्द्वः । आदिशब्दयोर्व्यवस्थाप्रकारवाचिनोरेकशेषः । आदिश्च आदिश्च आदी, भूवौ आदी येषामिति विग्रहः । भूप्रभृतयो वासदृशाः इत्यर्थः । सादृश्यं क्रियावाचित्वेनेत्यभिप्रेत्याह क्रियावाचिन इति' इति तत्त्वबोधिन्याम् । 'भूसाहचर्याद् वाशब्दोऽनव्ययं गृह्यते वासाहचर्याद् भूशब्दोऽसत्त्ववाची गृह्यते । तथा भूवौ भूवाशब्दौ क्रियावाचकावेवेति फलितार्थमाह क्रियावाचिन इति', अत्र 'पुंस्यादिः पूर्वपौरस्त्यप्रथमाद्याः', 'प्रकारो भेदसादृश्ये' इत्यमरकोशः, 'प्रथमस्तु भवेदादौ प्रधानेऽपि च वाच्यवत्' इति मेदिनीकोशश्चाभिज्ञेयः ।

**३८.एङि पररूपम् ६ । १ । ९४ ॥**

आदुपसर्गादेङादौ धातौ परे पररूपमेकादेशः स्यात् । प्रेजते । उपोषति ॥

**३९.अचोऽन्त्यादि टि १ । १। ६४ ॥**

अचां मध्ये योऽन्त्यः स आदिर्यस्य तट्टिसंज्ञं स्यात् । **वा.**(शकन्ध्वादिषु पररूपं वाच्यम्) ।

---

**अरू उदाहरण-**

उप+ऋच्छति= उपार्च्छति (नजीक जान्छ) । अव+ऋणोति= अवार्णोति (जान्दछ) ।

प्र+ऋद्धयति= प्रार्द्धयति (ज्यादै बढ्छ) अव+ऋतीयते= अवार्तीयते (निन्दा गर्दछ) ।

**एङीति-** अवर्ण अन्तमा हुने उपसर्गदेखि एङ् आदिमा हुने धातु पर भएमा पूर्व र परका स्थानमा पररूप एकादेश होस् ।

पररूप भनेको परको वर्ण (सम्मुख भएर पढ्दा दाहिने हाततिरको वर्ण) को जस्तो रूप छ त्यस्तै रूप भएको वर्ण वर (बायाँ)र पर (दायाँ)रहेका दुवै वर्णका स्थानमा हुने भनेको हो । यो सूत्र "वृद्धिरेचि" यस सूत्रको अपवाद हो ।

**प्रेजते-** (अत्यन्त काम्दछ) 'प्र+एजते' यस्तो स्थिति भएमा 'प्र' लाई उपसर्गसंज्ञा र 'एज्'लाई धातुसंज्ञा भएपछि अवर्णान्त उपसर्ग प्रदेखि एङ् आदिमा हुने एज् धातु पर भएकोले "वृद्धिरेचि"ले पाएको वृद्धिलाई बाँधेर "एङि पररूपम्"ले पूर्व र परको अकारर एकारका स्थानमा पररूप एकार एकादेश भयो "प्रेजते" सिद्ध भयो ।

**उपोषति-** (नजीकमा पोल्दछ) "उप+ओषति" यस्तो स्थिति भएमा "उप"को उपसर्ग संज्ञा र "ओष्"को धातुसंज्ञा भएपछि अवर्णान्त उपसर्ग उप देखि एङ् आदिमा हुने धातु ओष् पर भएकोले "वृद्धिरेचि"लाई बाधेर "एङि पररूपम्"ले पूर्व र परका अकारर ओकारका स्थानमा पररूप ओकार एकादेश भयो, "उपोषति" ।

प्र+एषते=प्रेषते (अधिक हिंड्छ) एषृ गतौ (भ्वा.)

प्र+एषयति= प्रेषयति (पठाउँछ) एषृ गतौ (भ्वादि-ण्यन्त)

उप+एजते= उपेजते (सुहाउँछ) । एजृ दीप्तौ भ्वा.

प्र+एषणीयम्= प्रेषणीयम् (पठाउन योग्य) इत्यादि ।

**अचोऽन्त्यादीति-** अच्हरूका मध्यमा जो अन्त्य अच् छ सो आदिमा हुने समुदाय अर्थात् अन्त्य अच्देखि पररहेको समुदाय 'टि'संज्ञक होस् । 'मनस्+ईषा', 'पतत्+अञ्जलिः', यहाँ अन्त्य अच्देखि पर स्, त्, हुनाले अस्, अत्, यो समुदायको 'टि' संज्ञा हुन्छ, तर 'शक+अन्धुः' 'कर्क+अन्धुः', इत्यादि ठाउँमा 'शक'को 'अ'कार 'कर्क'को 'अ'कारदेखि पर व्यञ्जन वर्ण नभएकोले सो आदिमा हुने समुदाय नहुँदा "व्यपदेशिवदेकस्मिन्" एकस्मिन् =असहाये सति, सहाय नभएमा, व्यपदेशिवत्=मुख्य सहायवतीव (कार्यम्) मुख्य सहायवान्मा भैं कार्य होस्, भनेकोले 'मनस्' यहाँ मनको अकार भैं 'शक'को अकार र 'कर्क'को अकार आफ्ना आदिमा आफै छ भन्ने मानिएकोले त्यसको 'टि'संज्ञा हुन्छ ।

**(वा.) शकन्ध्वादीति-** शकन्ध्वादिगणपठित शब्दसिद्धिका विषयमा पूर्व परका स्थानमा पररूप एकादेश होस् भन्नु ।

यहाँ शकन्धुः, कर्कन्धुः, कुलटा, इत्यादि रूप सिद्ध गर्न त 'टि'संज्ञा नगर्दा पनि हुन्थ्यो, मनीषा, पतञ्जलिः, आदि रूप सिद्ध गर्नको निमित्त 'टि'संज्ञाको प्रयोजन छ । त्यसैकारण "शकन्ध्वादिषु०" यस वार्तिकको अन्तमा निम्नलिखित गणसूत्र राखिएको हो ।

**ग.सू.** (तच्च टेः ।) शकन्धुः । कर्कन्धुः । मनीषा। आकृतिगणोऽयम् । मार्त्तण्डः ॥

(ग.सू.) **तच्चेति-** त्यो पररूप पनि टिका स्थानमा होस् ।

**शकन्धुः** (शक देशमा बस्ने मानिसको कूवा) **कर्कन्धुः** - (कर्क नाम भएका जातिविशेषको कूवा) "शक+अन्धुः" "कर्क+अन्धुः" यहाँ शकको अन्त्य अकार, कर्कको अन्त्य अकारको, 'अचोऽन्त्यादि टि' ले व्यपदेशिवद्भावले 'टि'संज्ञा भएपछि "अकः सवर्णे दीर्घः" ले पाएको दीर्घलाई बाधेर यी शकन्ध्वादि गण पठित शब्द हुनाले यिनको सिद्धिका निमित्त "शकन्ध्वादिषु पररूपं वाच्यम्" यस वार्तिकले पूर्व र परको दुवै अकारका स्थानमा पररूप अकार भयो 'शकन्धुः, कर्कन्धुः', सिद्ध भयो ।

**मनीषा** (बुद्धि) "मनस्+ईषा" यहाँ "अचोन्त्यादि टि" ले अन्त्यअच्देखि परको समुदाय 'अस्'भागलाई 'टि'संज्ञा भयो "शकन्ध्वादिषु०" यस् वार्तिकले 'तच्च टेः' यो गणसूत्रको सहयोग लिएर पूर्वको अस् 'टि'र परको 'ई' दुवैका स्थानमा पररूप ई भए पछि मन्+ईषा भयो वर्णमेलन गर्दा 'मनीषा' सिद्ध भयो ।

**पतञ्जलिः-** पतन्तः अञ्जलयो यस्मिन् (गिर्दछन् जलाञ्जलि जसमा, यो विग्रह हो । व्याकरण भाष्यकार महर्षि) 'पतत्+अञ्जलिः' यहाँ 'पतत्'को अन्तिम भाग 'अत्'लाई 'अचोऽन्त्यादि टि' यो सूत्रले 'टि'संज्ञा र पूर्वोक्त गणसूत्रले पूर्ववत् पररूप गरेपछि 'पतञ्जलिः' यो रूप सिद्धभयो ।

अन्य उदाहरण–

हल+ईषा=हलीषा । (हलाको डाँडो) । लाङ्गल+ईषा=लाङ्गलीषा । (हलाको डाँडो) ।

कुल+अटा= कुलटा । (वेश्या स्त्री) ।

सीम+अन्तः= सीमन्तः । (स्युँधो) । यहाँ केशरचना अर्थमा मात्र पररूप हुन्छ ।

सार+अङ्गः=सारङ्गः । (मृग, मयूर) । यहाँ पशुर पक्षी अर्थमा मात्र पररूप हुन्छ ।

सीम+अन्तः, सार+अङ्ग यी दुवै स्थलमा अरू अर्थ बुझिएमा दीर्घ हुन्छ ।

साँधको छेऊलाई कहँदा 'सीमान्तः' र बलियो अंङ्ग भएकोलाई कहँदा 'साराङ्गः' यस्तो हुन्छ ।

**आकृतीति-** यो शकन्ध्वादिगण आकृतिगण हो ।

**मार्तण्डः** (सूर्य) 'मार्त+अण्डः' यो स्थितिमा मार्तका अकारलाई "अचोऽन्त्यादि टि"ले टिसंज्ञा भयो "शंकन्ध्वादिषु पररूपं वाच्यम्" यो वार्तिकले मार्तको अकार र अण्डको अकार दुवैका स्थानमा पररूप अकार एकादेश भयो 'मार्तण्डः' सिद्ध भयो ।

**गण-** 'गण'को अर्थ हो समूह जब धेरै शब्दको यौटै काम गर्नुपर्छ । ती शब्दहरूमध्ये पहिलेको शब्द लिएर आदि शब्द जोडेर गणमा उल्लिखित सबै शब्दहरूको ग्रहण गरिन्छ । जस्तै- शकन्ध्वादि गणमा शकन्धु आदि शब्दहरूको समूह छ । त्यसमा शकन्धु शब्द पहिलो छ त्यसैले त्यसलाई शकन्ध्वादिगण भनिन्छ । सूत्रमा लाघवको दृष्टिले आवश्यक ठाउँमा, चादिगण, प्रादिगण, अर्धर्चादिगणको निर्देश गरिएको छ । सूत्रले इङ्गित गरेका गणको गणपाठ स्वयं पाणिनिमहर्षिले रचना गर्नुभएको छ । कुनै कुनै यस्ता गण छन्, जहाँ सबै शब्दहरूको परिगणना गर्न सकिएको छैन । त्यस्ता गणलाई आकृतिगण भनिन्छ । यसको अर्थ हो- "आकृत्या गण्यते परिचीयते इत्याकृतिगणः" स्वरूप देखेर परिचय गर्नुपर्ने । यो शब्द यो गणमा पऱ्यो भन्नु पर्ने । त्यस्तै 'मृतण्ड' शब्द अथवा मार्तण्ड शब्द शकन्ध्वादि गणमा परेको कुरा उसको स्वरूप देखेर थाहा हुन्छ । मार्तण्डः, यहाँ 'मृतं च तत् अण्डम्' यो अर्थमा 'मृत सु+अण्ड सु', यहाँ समास, विभक्तिलुक् भएपछि 'मृत+अण्डः' हुन्छ । यहाँ "शकन्ध्वादिषु०" यो वार्तिकले पररूप भएर 'मृतण्ड' शब्द बन्दछ । 'मृतण्डे भवः' यस विग्रहमा अण् भएर 'मार्तण्डः' शब्द सिद्ध हुन्छ । यहाँ

**४०.ओमाङोश्च ६ । १ । ९५ ॥**

ओमि आङि चात्परे पररूपमेकादेशः स्यात् । शिवायों नमः । शिव एहि ॥

**४१.अन्तादिवच्च ६ । १ । ८५ ॥**

योऽयमेकादेशः स पूर्वस्यान्तवत्परस्यादिवत् । शिवेहि ॥

**४२.अकः सवर्णे दीर्घः ६ । १ । १०१ ॥**

अकः सवर्णेऽचि परे पूर्वपरयोर्दीर्घ एकादेशः स्यात् ।

---

'मार्तण्ड' यो रूप देखेर मृतण्ड शब्द शकन्ध्वादि गणभित्र रहेछ भन्ने जानियो । मृतण्ड या मार्तण्ड जुन शब्द गणपाठमा लेखे पनि यहाँ पररूप हुन्छ भन्ने कुरा बुझाउनु हो । पररूप नगरेर "मृत+अण्डः"मा दीर्घ गरे मृताण्ड यस्तो शब्द बन्दछ । 'मृताण्डे भवः' यस अर्थमा अण् गर्दा 'मार्ताण्डः' यस्तो रूप हुन्छ । वेदमा मार्ताण्ड शब्द देखिए पनि लोकमा मार्तण्ड शब्द नै प्रयुक्त छ । 'विकर्तनार्कमार्तण्डमिहिरारुणपूषणः' (अमरकोश) ।

शकन्ध्वादि आकृति गण हो भन्ने बारे पाणिनिको सूत्र "प्रोपाभ्यां समर्थाभ्याम् १।३।४२" प्रमाण छ । समः अर्थो ययोस्तौ समार्थौ ताभ्यां "समार्थाभ्याम्" हुनुपर्नेमा "समर्थाभ्याम्" भयो, अतः यो 'समर्थ' शब्द पनि शकन्ध्वादिभित्र पर्‍यो भन्ने बुझियो ।

**ओमाङोरिति-** अवर्णदेखि 'ओम्' शब्द र 'आङ्' शब्द (अर्थात् ङित् आकार) पर भएमा पनि पूर्व र परका स्थानमा पररूप एकादेश होस् ।

**शिवायोन्नमः** (शिवजीलाई ॐ शब्दको उच्चारणपूर्वक नमस्कार छ ।) "शिवाय+ओन्नमः", यहाँ शिवायको अकारदेखि ओन्नमःको ओकार पर भएको हुँदा पूर्व र पर 'अ' र 'ओ'का स्थानमा "वृद्धिरेचि" लाई बाधेर प्रकृत सूत्र "ओमाङोश्च"ले पररूप ओकार भयो, 'शिवायोन्नमः' सिद्ध भयो ।

**शिवेहि-** (शिवजी आउनुहोस्) 'शिव+आ+इहि' यस्तो स्थिति भएमा 'शिव+आ' यहाँ "ओमाङोश्च" ले पररूप पायो, 'आ+इहि' यहाँ "आद् गुणः" ले गुण पायो, पहिले पररूप गर्ने कि ? गुण गर्ने ? नियम भएन । नियम नभएका ठाउँमा मा नियम गर्ने परिभाषा छ "धातूपसर्गयोः कार्यमन्तरङ्गमन्यत्कार्य बहिरङ्गम् । असिद्धं बहिरङ्गमन्तरङ्गे" धातु र उपसर्गको कार्य अन्तरङ्ग हो, अरू कार्य बहिरङ्ग हो । अन्तरङ्ग कार्य गर्दा बहिरङ्ग असिद्ध हुन्छ, भनेपछि यहाँ धातु र उपसर्गको कार्य 'आ+इहि'मा गुण गर्नु छ त्यो अन्तरङ्ग भयो । अरू कार्य 'शिव+आ' यहाँ पररूप गर्नु छ, त्यो बहिरङ्ग भयो । अन्तरङ्ग-गुण कार्य गर्दा बहिरङ्ग-पररूप कार्य असिद्ध भयो, पहिले 'आद् गुणः'ले गुण भयो, 'शिव+एहि' भयो । अब आङ् पर नभएकोले "ओमाङोश्च" ले पररूप हुन सकेन । पररूप गर्नका निमित्त एहिको एकारमा आङ्त्व धर्म ल्याउनु आवश्यक भयो । यसैका निमित्त सूत्र छ -

**अन्तादिवच्चेति-** जो यो पूर्व र परका स्थानमा भएको एकादेश छ, त्यो पूर्वको अन्त जस्तै र परको आदि जस्तै होस् ।

अब 'शिव+एहि' यहाँ पूर्व र परका स्थानमा भएको एकादेश एहिको एकार छ, जो 'आ'र 'इ'का स्थानमा भएको एकादेश हो, त्यो पूर्वको अन्त जस्तै हुँदा आकार जस्तै भयो,र 'आ' मा रहेको आङ्त्व धर्म, 'एहि'का 'ए'कारमा आयो, अनि 'एहि'को 'ए'कार पनि आङ् मानियो । यहाँ परादिवद्भावको आवश्यकता छैन । अब शिवको 'अ'कारदेखि 'एहि'को 'ए'कार आङ् पर भएकोले "ओमाङोश्च"ले दुवैको स्थानमा पररूप एकार हुँदा "शिव्+एहि" भयो वर्णमेलन भयो ='शिवेहि' रूप सिद्ध भयो ।
अरू उदाहरण- अव+आ+इहि= अवेहि । (जान) । उप+आ+इहि=उपेहि । (नजीक आऊ) ।

दैत्यारिः । श्रीशः । विष्णूदयः । होतॄकारः ॥

**४३.एङः पदान्तादति ६ । १ । १०९ ॥**

पदान्तादेङोऽति परे पूर्वरूपमेकादेशः स्यात् । हरेऽव । विष्णोऽव ॥

---

कृष्ण+आ+इहि= कृष्णेहि । (कृष्ण आउनुहोस्) । इत्यादि

**अकः सवर्ण इति-** अक् देखि सवर्ण अच् पर भएमा पूर्व र परका स्थानमा दीर्घ एकादेश होस् ।

**दैत्यारिः** (दैत्यका शत्रु विष्णु) 'दैत्य+अरिः' यस्तो स्थिति भएमा दैत्यको 'अ'कार अक् देखि 'अरिः'को अकार सवर्ण अच् पर भएकोले "आद् गुणः"ले पाएको गुणलाई बाधेर पूर्व र पर दुवै अकारका स्थानमा "अकः सवर्णे दीर्घः"ले दीर्घ आ, ई, ऊ, ॠ, ए, ओ, ऐ, औ पाएमा आन्तरतम्यात् कण्ठ स्थानी दुवै 'अ'कारका स्थानमा कण्ठस्थानी दीर्घ 'आ'कार एकादेश भयो 'दैत्यारिः' सिद्ध भयो ।

**श्रीशः** (विष्णु) श्री+ईशः यस्तो स्थिति भएमा 'श्री' ईकार अक्देखि 'ईशः'को 'ई'कार सवर्ण अच् पर भएकोले "इको यणचि" ले पाएको यण्लाई बाधेर पूर्व र पर दुवै इकारका स्थानमा "अकः सवर्णे दीर्घः" ले दीर्घ भनेका आ, ई, ऊ, ॠ, ए, ओ, ऐ, औ सबै पाएमा 'स्थानेऽन्तरतमः' यो सूत्र लगाएर आन्तरतम्यले तालुस्थानी दुवै ईकारका स्थानमा तालुस्थानी दीर्घ ईकार एकादेश भयो, 'श्रीशः' रूप सिद्ध भयो ।

**विष्णूदयः** (विष्णुको उदय) 'विष्णु+उदयः' यस्तो स्थिति भएमा विष्णुको 'उ'कार अक् देखि उदयको 'उ'कार सवर्ण अच् पर भएकोले, 'इको यणचि'ले पाएको यण्लाई बाधेर 'अकः सवर्णे दीर्घः'ले पूर्व र परका स्थानमा दीर्घ - आ, ई, ऊ, ॠ, ए, ओ, ऐ, औ पाएमा 'स्थानेऽन्तरतमः' यो सूत्र लगाएर ओष्ठस्थानजन्य दुवै उकारका स्थानमा ओष्ठस्थानजन्य दीर्घ 'ऊ'कार एकादेश भयो, 'विष्णूदयः' यो रूप सिद्ध भयो ।

**होतॄकारः** (होताको ऋकार) 'होतृ+ऋकारः' यस्तो स्थिति भएमा होतृको 'ऋ'कार अक्देखि 'ऋकारः'को 'ऋ'कार सवर्ण अच् पर हुनाले यण्लाई बाधेर 'अकः सवर्णे दीर्घः' यस सूत्रले पूर्व र पर दुवै ऋकारका स्थानमा दीर्घ - आ, ई, ऊ, ॠ, ए, ओ, ऐ, औ पायो, 'स्थानेऽन्तरतमः' यो सूत्र लगाएर आन्तरतम्याद् मूर्धस्थानजन्य दुवै ऋकारका स्थानमा मूर्धस्थानजन्य दीर्घ ॠकार एकादेश भयो 'होतॄकारः' रूप सिद्ध भयो ।

अरू उदाहरण कमल+आकरः=कमलाकरः= (तलाउ) कमल+आलया=कमलालया । (लक्ष्मी)
विद्या+आलयः= विद्यालयः । (पाठशाला) मुनि+इन्द्रः= मुनीन्द्रः । (श्रेष्ठ मुनि)
गिरि+ईशः=गिरीशः । (शिवजी) वधू+उत्सवः= वधूत्सवः । (दुलहीको उत्सव) आदि ।

**एङः पदान्तेति-** पदान्त एङ्देखि ह्रस्व अकार पर भएमा पूर्व र परका स्थानमा पूर्वरूप एकादेश होस् । पद भनेको के हो ? यो कुरा "सुप्तिङन्तं पदम्" यो सूत्रमा संज्ञाप्रकरणमा भनिएको छ । यो सुबन्त र तिङन्तको ज्ञान सुबन्त प्रकरण र तिङन्त प्रकरणमा हुनेछ । यहाँ हरे, विष्णो, यी दुई पद उदाहरणमा दिइएका छन् 'हरे' हरि शब्दको सम्बुद्धिको रूप हो, 'विष्णो' विष्णुशब्दको संवुद्धिको रूप हो, अतः दुवै सुबन्त पद हुन् । 'अव' यो 'अव रक्षणे' यस धातुको लोट्लकार मध्यम पुरूषको एकवचनको रूप हुनाले तिङन्त हो ।

**हरेऽव-** (भगवान् रक्षा गर) "हरे+अव" यस्तो स्थिति भएमा पदान्त एङ् हरेका 'ए'कार देखि अवको ह्रस्व अकार पर भएको हुनाले पूर्व र पर 'ए'र 'अ' का स्थानमा "एङः पदान्तादति" यो सूत्रले 'एचोऽयवायावः' लाई बाँधेर पूर्वरूप 'ए'कार भयो, 'हर्+एव' भयो, वर्णसम्मेलन भयो, 'हरेऽव' यस्तो रूप सिद्ध भयो । 'ऽ' यो खण्ड अकार पूर्वरूप भएको बुझाउन चिह्न मात्र राखिएको हो । यसको उच्चारण हुँदैन, नराखे पनि अशुद्ध हुँदैन ।

**विष्णोऽव-** (विष्णु भगवान् ! रक्षा गर) 'विष्णो+अव' यस्तो स्थितिमा पदान्त एङ् विष्णोको

**४४.सर्वत्र विभाषा गोः ६ । १ । १२२ ॥**

लोके वेदे चैङन्तस्य गोरति वा प्रकृतिभावः पदान्ते । गोअग्रम्, गोऽग्रम् । एङन्तस्य किम् ! चित्रग्वग्रम् । पदान्ते किम् ! गोः ॥

---

'ओ'कारदेखि अवको अकार पर हुनाले "एचोऽयवा यावः" लाई बाधेर पूर्वोक्त सूत्रले पूर्वको 'ए'र परको 'अ' का स्थानमा पूर्वरूप ओकार एकादेश भयो, 'विष्ण् ओव', भयो वर्ण मेलन भयो 'विष्णोऽव' सिद्ध भयो ।

अरू उदाहरण- वने+अस्मिन् = वनेऽस्मिन् । (यस वनमा) सर्वे+अपि = सर्वेऽपि । (सबै पनि)
के+अपि = केऽपि । (कोही पनि) रामो+असौ =रामोऽसौ । (यी राम हुन्)
कृष्णो+अवदत् = कृष्णोऽवदत् । (कृष्णले भने)

**सर्वत्रेति-** लोक र वेदमा पनि एङन्त गो शब्दको, ह्रस्व अकार पर भएमा विकल्पले प्रकृतिभाव होस् पदान्त गोशब्द भएमा ।

**लोक र वेद-** संस्कृत भाषाको दुई ढाँचाबाट प्रयोग गरिन्छ १. लौकिक भाषा २. वैदिक भाषा ।

(१) पुराण, काव्य, आरव्यायिका, आदिमा प्रयोग गरिने र व्यवहारमा प्रयोग गरिने लौकिक भाषा हो ।

२ वेदमा मात्र प्रयोग गरिने वेदका मन्त्रको भाषा वैदिक भाषा हो ।

(१) यस व्याकरणमा पाणिनि, कात्यायन, पतञ्जलिले लौकिक भाषालाई भाषाशब्द र अनार्षशब्दले निर्देशन गरेका छन्– जस्तै "प्रथमायाश्च द्विवचने भाषायाम्" "प्रत्यये भाषायां नित्यम्" "सम्बुद्धौ शाकल्यस्येतावनार्षे" इत्यादि ।

(२) वेदमा प्रयोग गरिने भाषा सम्बन्धमा "छन्दसि पुनर्वस्वोरेकवचन्" "षष्ठीयुक्तश्छन्दसि वा" "छन्दसि परेऽपि" "द्वितीया ब्राह्मणे" 'मन्त्रे घसह्वरण०" "बहुलं छन्दसि" "बभूथाततन्थजगृभ्मववर्थेति निगमे" इत्यादि ठाउँमा छन्दस्, मन्त्र, निगम, संहिता, यजुष्, ब्राह्मण आदि शब्दले निरूपण गरेका छन् । धेरै जस्तो यौटै नियम भएर पनि कतिपय ठाउँमा लौकिक भाषा र वैदिक भाषाका नियमहरू धेरै फरक छन् । वैदिक भाषा बुझ्न वैदिक व्याकरण अध्ययन गर्नु आवश्यक छ । यहाँ गोशब्दको प्रकृतिभाव सर्वत्र हुन्छ भनेको वैदिक भाषा लौकिक भाषा दुवैमा हुन्छ भनेको हो ।

**प्रकृतिभाव–** प्रकृतिभाव भनेको के हो त ? 'स्वस्वरूपेणावस्थानं प्रकृतिभावः' । आफ्नो स्वरूप जस्तो छ उस्तै रहनु अर्थात् सन्धि नहुनु प्रकृतिभाव हो ।

**गो अग्रम्/गोऽग्रम्-** (गाईको अगिल्लो भाग) "गो+अग्रम्" यस्तो स्थिति भएमा यहाँ "गोः अग्रम्" यो विग्रहमा षष्ठी समास भएर विभक्तिको लोप भएको हुनाले लुप्त विभक्तिसँग गोशब्द पदान्त छ, एङन्त पनि छ, ह्रस्व अकार अग्रम्को अकार पर छ र पूर्वरूपलाई बाधेर 'सर्वत्र विभाषा गोः' सूत्रले लौकिक वैदिक दुवै भाषामा प्रकृतिभाव भयो, प्रकृतिभाव भनेको के हो ? -'स्वस्वरूपेणावस्थानं प्रकृतिभावः' आफ्नो स्वरूपले यथावत् रहनु प्रकृतिभाव हो, भन्नाले जस्ताको तस्तै रह्यो, 'गो अग्रम्' यस्तै रह्यो । प्रकृतिभाव नभएका पक्षमा "एङः पदान्तादति" ले पूर्वरूप भयो 'गोऽग्रम्' भयो ।

**एङन्तस्य किमिति-** एङन्तस्य किम् ? "सर्वत्र विभाषा गोः" यस सूत्रमा एङन्तस्य किन भन्ने ? न भन्ने हो भने 'चित्रा गावो यस्य' यो विग्रहमा बहुव्रीहि समास भएर 'चित्रगु' शब्द बन्छ त्यसपछि 'चित्रगोः अग्रम्' यस्तो षष्ठी समास भएर विभक्ति लोप भएपछि 'चित्रगु+अग्रम्' यहाँ 'चित्रगु'मा 'गु' यो "गोस्त्रियोरुपसर्जनस्य"ले, ह्रस्व भएर गु भएता पनि 'एकदेशविकृतमनन्यवत्' यो परिभाषा लगाएर गोशव्द नै हो, यहाँ गोशव्द एङन्त नभए पनि अवङ्, भैजाला, सो नहोस् भन्ने हेतुले हामीले एङन्तस्य पढचौं, तब चित्रगु यहाँ एङन्त अर्थात् ओकारान्त गोशब्द छैन, उकारान्त छ र प्रकृतिभाव भएन, "इको यणचि"ले यण् भयो 'चित्रग्वग्रम्' सिद्ध भयो ।

**४५.अनेकाल् शित्सर्वस्य १ । १ । ५५ ॥**
इति प्राप्ते ॥
**४६.ङिच्च १ । १ । ५३ ॥**
ङिदनेकालप्यन्त्यस्यैव स्यात् ॥
**४७.अवङ् स्फोटायनस्य ६ । १ । १२३ ॥**
पदान्ते एङन्तस्य गोरवङ् वाऽचि । गवाग्रम्, गोऽग्रम् ।

---

**पदान्ते किमिति-** पदान्ते किम् ? 'सर्वत्र विभाषा गोः' सूत्रको वृत्तिमा पदान्ते किन भन्ने ? नभन्ने हो भने सूत्रको अर्थ लोक र वेदमा पनि एङन्त गोशब्दको, ह्रस्व अकार पर भएमा प्रकृतिभाव होस्, यस्तो अर्थ होला । यस्तो अर्थ भएपछि गोशब्ददेखि षष्ठीको एकवचन ङस् ल्याउँदा "गो+अस्" यहाँ एङन्त गोशब्ददेखि अस् को ह्रस्व अकार पर भएकोले प्रकृतिभाव होला सो नहोस् भन्ने अभिप्रायले हामीले 'पदान्ते' भन्यौं, पदान्ते भनेपछि यहाँ गोशव्दको ओकार पदान्तमा छैन, अर्थात् 'अस्'लाई पर राखेर 'गो' यसलाई पदसंज्ञा हुदैन र 'गो+अस्' यहाँ प्रकृतिभाव भएन, "ङसिङसोश्च" ले पूर्वरूप भयो 'गोस्' भयो रुत्व विसर्ग भयो 'गोः' सिद्ध भयो ।

'गो+अग्रम्' यहाँ पाणिनिले आफ्नो मतमा "सर्वत्र विभाषा गोः" ६।१।१२२ यस सूत्रले वैकल्पिक प्रकृतिभाव र प्रकृतिभाव न भएको पक्षमा पूर्व रूप हुने नै भयो, यसरी दुई रूप सिद्ध गरेपछि पछिल्लो सूत्र "अवङ् स्फोटायनस्य" ६।१।१२३ पढेर स्फोटायन ऋषिको मतमा अवङ् आदेश हुन्छ भन्ने कुरा देखाउनु भएको छ । ग्रन्थकारले अवङ् आदेश गर्ने ठाउँमा लाग्ने "अनेकाल्शित्सर्वस्य", र "ङिच्च" यी दुई सूत्र यहाँ पहिले लेख्नुभएको छ, तर "अवङ् स्फोटायनस्य" यो सूत्रभन्दा पछाडि लेखेको भए सुगम हुन्थ्यो ।

**अनेकालिति-** अनेक अल् (अक्षर) भएको आदेश र तालव्य शकारको इत्संज्ञा हुने आदेश सम्पूर्णस्थानीका स्थानमा होस् । अनेकाल् आदेश जस्तै - "अस्तेर्भूः"ले अस् पूरैका स्थानमा 'भू' आदेश हुन्छ । "अष्टाभ्य औश्" यहाँ औ आदेश शित् हुनाले पूरै जस् र शस् का स्थानमा हुन्छ । यस्तै अन्यत्र पनि जान्नु ।

**इति प्राप्त इति-** अवङ् आदेश अनेकाल् हुनाले - यो सूत्रले सबैका स्थानमा पाएमा-

**ङिच्चेति-** ङकारको इत्सज्ञा हुने आदेश अनेकाल् भए पनि स्थानीका अन्त्य अल्का स्थानमा होस् ।

**अवङिति-** यहाँ अति (ह्रस्व अकार परभएमा) को अनुवृत्ति हट्यो । अचि (अच् पर भएमा) को अनुवृत्ति आयो । पदान्तमा एङ् अन्तमा हुने गोशब्दका स्थानमा अवङ् आदेश विकल्पले होस् अच् पर भएमा ।

यहाँ "सर्वत्र विभाषा गोः" यो सूत्रबाट विभाषाको अनुवृत्ति आइरहेको छ । त्यसको अर्थ विकल्पले होस् यही हुन्छ । स्फोटायनको मतमा भन्नु पनि विकल्पले होस् भन्नु हो । अतः यहाँ 'स्फोटायनस्य' भनेर उहाँको मत देखाउनु सम्मानका निमित्त हो । त्यस्तै "वा सुप्यापिशलेः" यहाँ आपिशलिको नाम लिनु र "इकोऽसवर्णे शाकल्यस्य ह्रस्वश्च" मा शाकल्य ऋषिको नाम लिनु पनि सम्मानार्थ हो । यस्तै अरू ठाउँमा पनि सम्मानार्थ अन्य ऋषिहरूको पाणिनिले स्मरण गरेका छन् ।

**गवाग्रम्/गोऽग्रम्-** (गाईको अग्रभाग या अगाडि) "गो+अग्रम्" यस्तो स्थिति भएमा पदान्त एङ् अन्तमा हुने गोशब्ददेखि अग्रम्को अकार अच् पर भएको हुनाले "अवङ् स्फोटायनस्य" यो सूत्रले स्फोटायन ऋषिको मतमा वैकल्पिक अवङ् आदेश भयो, ङकारको "हलन्त्यम्" ले इत्संज्ञा र "तस्य लोपः" ले लोप भयो, 'अव' भयो "अलोऽन्त्यस्य" परिभाषा सूत्रले अन्त्य अल् गो

पदान्ते किम् ? गवि ॥

**४८.इन्द्रे च ६ । १ । १२४ ॥**

गोरवङ् स्यादिन्द्रे । गवेन्द्रः ॥

**४९.दूराद्धूते च ८ । २ । ८४ ॥**

दूरात्सम्बोधने वाक्यस्य टेः प्लुतो वा ॥

**५०.प्लुतप्रगृह्या अचि नित्यम् ६ । १ । १२५ ॥**

एतेऽचि प्रकृत्या स्युः ।

---

को ओकारका स्थानमा अव पायो त्यसलाई बाधेर अनेकाल् (धेरै अक्षर= ग् अ व् अ) भएको हुँदा "अनेकाल् शित्सर्वस्य" ले गो सम्पूर्णका स्थानमा पाएकोमा बाधेर ङित् हुनाले "ङिच्च" ले अन्त्य अल् ओकारका स्थानमा अव आदेश हुँदा 'ग्+अव+अग्रम्' भयो, गकार गएर अवका अकारमा लाग्यो "गव+अग्रम्" भयो, "अव+अग्रम्" यहाँ "अकः सवर्णे दीर्घः"ले दीर्घ भयो 'गवाग्रम्' सिद्ध भयो । अवङ् नभएको पक्षमा "एङः पदान्तादति"ले पूर्वरूप भयो 'गोऽग्रम्' सिद्ध भयो । यी दुईरूप स्फोटायनको मतमा सिद्ध भए ।

पाणिनिको मतमा विकल्पले प्रकृतिभाव भएमा गो अग्रम्, पूर्वरूप भएमा गोऽग्रम् यी दुई रूप पहिले नै सिद्ध गरिएका छन् । यहाँ मतान्तर देखाउन अवङ् आदेश र पूर्वरूप गरेर 'गवाग्रम्' 'गोऽग्रम्' यी दुई रूप देखाइयो, तर पहिले प्रकृतिभाव प्रकृतिभाव, नभएको पक्षमा अवङ्, त्यो नभएको पक्षमा पूर्वरूप गरेर एकै ठाउँमा दिइएको भए छात्रहरूलाई संझन सजिलो हुने थियो, किनभने, वस्तुतः जान्नुपर्ने कुरा 'गो+अग्रम्' यो स्थितिमा 'गो अग्रम्', 'गवाग्रम्', 'गोऽग्रम्', यी तीन रूप हुन्छन् भन्ने नै हो ।

**पदान्ते किमिति-** पदान्ते किम्? "अवङ् स्फोटायनस्य"को वृत्तिमा पदान्ते किन भन्नु ? नभनेमा गोशब्ददेखि सप्तमीको एकवचन ङि आएर भएको, 'गो+इ' यहाँ पनि "अवङ् स्फोटायनस्य"ले अवङ् आदेश होला । सो नहोस् भनेर 'पदान्ते' यो पद पढियो, 'गो+इ' यहाँ 'इ'लाई पराखेर 'गो'लाई पदसंज्ञा हुदैन, अतः अवङ् आदेश भएन, "एचोऽयवायावः" ले अव् आदेश भयो 'गवि' ।

यहाँ "अवङ् स्फोटायनस्य"ले गरिने वैकल्पिक अवङ्आदेश व्यवस्थितविकल्प भएको छ । अर्थात् कहीं नित्य हुन्छ । जस्तै 'गवाक्षः' (झ्याल) यो उदाहरणमा नित्य हुन्छ, भनिएको छ ।

**अन्य उदाहरण-** गवाजिनम्/गोऽजिनम् (गाईको छाला) यहाँ अवङ् नभएको पक्षमा पूर्वरूप भयो । यहाँ एकपक्षमा प्रकृतिभाव भएर 'गो अजिनम्' यो रूप पनि हुन्छ ।

गवौदनम्/गवोदनम् (गाईको निमित्त भात) यहाँ अवङ् नभएको पक्षमा अव् आदेश भयो ।

**इन्द्रे चेति-** गोशब्दका स्थानमा अवङ् आदेश होस्, इन्द्रशब्द पर भएमा । नित्य अवङ् आदेश गर्न यो सूत्र विधान गरिएको हो । अन्यथा 'अवङ् स्फोटायनस्य'ले वैकल्पिक अवङ् त पाएकै थियो ।

**गवेन्द्रः-** (साँढे) 'गो+इन्द्रः' यस्तो स्थितिमा 'एचोऽयवायावः' लाई बाधेर 'अवङ् स्फोटायनस्य' ले वैकल्पिक अवङ् पायो त्यसलाई बाधेर 'इन्द्रे च'ले नित्य 'अवङ्' आदेश 'ङ'कारको इत्संज्ञा, लोप, भएपछि, 'अलोऽन्त्यस्य'ले अन्त्य अल् ओकारका स्थानमा पायो त्यसलाई बाधेर 'अनेकाल् शित् सर्वस्य'ले गो सबैका स्थानमा पायो त्यसलाई बाधेर 'ङिच्च'ले अन्त्य अल् 'गो'का ओकारका स्थानमा अव आदेश भयो 'ग् अव+इन्द्रः' भयो, 'गव+इन्द्रः' यहाँ 'आद् गुणः'ले गुण भयो 'गवेन्द्रः' सिद्ध भयो ।

**दूरादिति-** टाढादेखि बोलाइने वाक्यका 'टि'संज्ञक अच्का स्थानमा प्लुत आदेश विकल्पले होस् ।

**प्लुतेति-** जो प्लुत र प्रगृह्य छन्, ती अच् पर भएमा नित्य प्रकृतिभावले रहून् । टाढाबाट

आगच्छ कृष्ण ३ अत्र गौश्चरति ॥

**५१.ईदूदेद्द्विवचनं प्रगृह्यम् १ । १ । ११ ॥**

ईदूदेदन्तं द्विवचनं प्रगृह्यं स्यात् । हरी एतौ । विष्णू इमौ । गङ्गे अमू ॥

**५२.अदसो मात् १ । १ । १२ ॥**

अस्मात्परावीदूतौ प्रगृह्यौ स्तः । अमी ईशाः । रामकृष्णावमू आसाते ।

---

बोलाइने संबोधन वाक्यमा प्लुत स्वर हुन्छ यो स्वभाविक पनि छ । '**टि**'संज्ञक अच्का स्थानमा प्लुत आदेश गर्नका दुई कारण छन् । एक त प्लुत भएपछि त्यसको उच्चारण धेरै लामो हुन्छ । अर्को कुरा त्यस वाक्यदेखि पर अच् भएमा प्लुतअच्को प्रकृतिभाव (सन्धिको निषेध) हुन्छ ।

प्रकृतसूत्र "प्लुतप्रगृह्या०" यो प्रकृतिभाव गर्ने सूत्र हो । प्लुत स्वरको उच्चारण लामो हुन्छ उच्चारण गर्ने प्रविधि गुरुकै मुखबाट सिक्नुपर्छ ।

**आगच्छ कृष्ण३ अत्र गौश्चरति-** 'आगच्छ कृष्ण+अत्र गौश्चरति' यस्तो स्थितिमा आगच्छकृष्णका अकारको "अचोऽन्त्यादि टि"ले 'टि'संज्ञा भएपछि "दूराद्धूते च" यस सूत्रले यो टाढाबाट बोलाइने वाक्य भएको हुदा त्यसको 'टि' कृष्णका अकारका स्थानमा प्लुत भनेका 'आ३, ई३, ऊ३, ॠ३, ए३, ओ३, ऐ३, औ३' सबै पायो, आन्तरतम्यले अकारका स्थानमा प्लुत 'आ३' भयो 'आगच्छ कृष्ण३+अत्र गौश्चरति' भयो, यहाँ कृष्ण३ को अकारदेखि अत्रको अकार पर भएमा "अकः सवर्णे दीर्घः"ले दीर्घ पायो पाएमा, "प्लुतप्रगृह्या अचि नित्यम्" यस सूत्रले प्लुत र प्रगृह्य अच् पर भएमा नित्य प्रकृतिभावले रहन् भनेकोले प्लुत 'कृष्ण३'को 'अ'कार जस्ताको तस्तै रह्यो, दीर्घ भएन, 'आगच्छ कृष्ण३ अत्र गौश्चरति' सिद्ध भयो, "दूराद्धूते च" ले प्लुत न भएको पक्षमा "अकः सवर्णे दीर्घः"ले दीर्घ भयो 'आगच्छ कृष्णात्र गौश्चरति' सिद्ध भयो ।

**ईदूदेदिति-** दीर्घ ईकार दीर्घ ऊकार एकार अन्त्यमा हुने द्विवचन प्रगृह्यसंज्ञक होस् । प्रगृह्य संज्ञा गर्नु केवल प्रकृतिभावका निमित्त हो । प्लुतमा झैं उच्चारणकाल फरक हुँदैन ।

**हरी एतौ-** (यी दुई हरि हुन्) 'हरी+एतौ' यहाँ दीर्घ ईकार अन्तमा हुने हरीको ईकार "अन्तादिवच्च" लगाएर द्विवचन छ र "इदूदेद्द्विवचनं"ले प्रगृह्यसंज्ञा भयो, अनि 'हरी'का 'ई'कारदेखि 'एतौ'को 'ए'कार अच् पर भएमा "इको यणचि"ले यण् पायो पाएमा "प्लुतप्रगृह्या अचि नित्यम्"ले प्लुत र प्रगृह्य, अच् पर भएमा नित्य प्रकृतिभावले रहन्छन् भनेको हुनाले यहाँ 'हरी'को 'ई'कार प्रगृह्य छ र नित्य प्रकृतिभावले रह्यो यण् भएन, 'हरी एतौ' यस्तै रह्यो र रूप सिद्ध भयो ।

**विष्णू इमौ-** (यी दुई विष्णु हुन्) 'विष्णू+इमौ', यहाँ ऊकार अन्तमा हुने द्विवचन हुनाले "ईद्देद्०"ले प्रगृह्यसंज्ञा भयो, 'इको यणचि'ले पाएको यण्लाई बाधेर "प्लुतप्रगृह्या अचि नित्यम्" यो सूत्रले प्रकृतिभाव भयो, प्रकृतिभाव भनेको के हो ? जस्ताको तस्तै रहनु अतः 'विष्णू इमौ' यस्तै रह्यो ।

**गङ्गे अमू-** (यी दुई गङ्गा हुन्) 'गङ्गे+अमू' यहाँ एकारान्त द्विवचन छ र "ईदूदेद्०"ले प्रगृह्यसंज्ञा, "एङः पदान्तादति" ले पाएको पूर्वरूपलाई बाधेर "प्लुतप्रगृह्या अचि नित्यम्"ले एकारको प्रकृतिभाव भयो, सिद्ध रूप 'गङ्गे अमू' यस्तै रह्यो ।

अरू उदाहरण - रवी इमौ । (यी दुई सूर्य हुन्) । कवी आगच्छतः, । (दुई कवि' आउँछन्) । पाणी उत्क्षिपति (दुई हात उठाउँछ) । भानू उदितौ । (दुई सूर्य उदाए) रमे आस्ताम् । (दुईरमा थिए) इत्यादि ।

**अदसो मादिति-** अदस् शब्दसम्बन्धी मकारदेखि पर रहेका दीर्घ ईकार र दीर्घ ऊकार प्रगृह्यसंज्ञक होऊन् ।

मात्किम् ! अमुकेऽत्र ॥

**अमी ईशाः** (यी ईश्वर हुन्) **रामकृष्णावमू आसाते**- (यी दुई राम र कृष्ण बसेका छन्) 'अमी+ईशाः', 'रामकृष्णावमू+आसाते' यस्तो स्थितिमा अमीको ईकार रामकृष्णावमूको अकार अदस् शब्द सम्बन्धी मकारदेखि पररहेका दीर्घ ईकार दीर्घ ऊकार हुनाले "अदसो मात्"ले प्रगृह्यसंज्ञा भयो, भएपछि 'अमी+ईशाः' यहाँ 'अकः सवर्णे दीर्घः'ले दीर्घ र 'रामकृष्णावमू+आसाते' यहाँ "इको यणचि" ले यण् पाएकोमा बाधेर "प्लुतप्रगृह्या अचि नित्यम्" यो सूत्रले ईकार ऊकारको प्रकृतिभाव भयो 'अमीईशाः', 'रामकृष्णावमू आसाते' सिद्ध भयो ।

**मात्किमिति**- मात्किम् ? 'अदसो मात्' भन्ने सूत्रमा मात् किन भन्नु ? मात् भन्थ्यौं र पो अदस् शब्दमा मकारदेखि पर रहेको एकार नपाइने हुनाले ईकार ऊकारको मात्र अनुवृत्ति आउँथ्यो । मात् नभन्ने हो भने पूर्व सूत्र, "ईदूदेद्द्विवचनं प्रगृह्यम्" बाट 'सन्नियोगशिष्टानां सह वा प्रवृत्तिः सह वा निवृत्तिः' यो न्याय लगाएर एकारको पनि अनुवृत्ति आउला, आएपछि सूत्रको अर्थ अदस् शब्दसम्बन्धी ईकार ऊकार एकार प्रगृह्यसंज्ञक होऊन् यस्तो होला । यस्तो अर्थ भए दोषजाला कहाँ ? 'अमुके+अत्र' यहाँ । यहाँ पनि अमुकेको एकारको प्रगृह्य संज्ञा होला र पूर्वरूपलाई बाधेर प्रकृतिभाव होला सो नहोस् भन्नाका निमित्त हामीले 'मात्' ग्रहण गऱ्यौं । 'मात्' ग्रहण गरेपछि ईकार ऊकारको मात्र अनुवृत्ति आयो । अदस्शब्दमा मकारदेखि पर रहेको एकार कहीं पनि नपाइने हुनाले अनुवृत्ति आएन । "अदसोमात्" यो सूत्रको अर्थ 'अदस् शब्दसम्वन्धी मकारदेखि पर रहेका दीर्घ ईकार ऊकार प्रगृह्यसंज्ञक होऊन्' यस्तो भयो । अव 'अमुके+अत्र' यहाँ अदस् शब्द सम्वन्धी मकारदेखि पर रहेको दीर्घ ईकार उकार छैन, ककारदेखि पररहेको एकार छ, अतः प्रगृह्यसंज्ञा भएन । "एङः पदान्तादति"ले पूर्व रूप भयो 'अमुकेऽत्र' सिद्ध भयो ।

एक पक्ष यो हो । यसमा अर्को पक्ष पनि छ । अर्को पक्षको तर्क अझ युक्तिसङ्गत देखिन्छ ।

**मात् किम्**= "अदसो मात्"भन्ने सूत्रमा मात् ग्रहण किन गर्नु ? मात् ग्रहण गरेका थियौं र पो मात् ग्रहण गर्नाको सामर्थ्यले त्रिपादी सूत्र "अदसोऽसेर्दादु दो मः" "एत ईद्वहुवचने"ले गरेको ईत्व ऊत्व सिद्ध हुन्थ्यो र पूर्वसूत्रवाट ईकार ऊकारको अनुवृत्ति आउँथ्यो । मात् ग्रहण नगरे पछि त त्रिपादीसूत्रले गरेको ईत्व ऊत्व असिद्ध होला र पूर्व सूत्र "ईदूदेद्द्विवचनम् प्रगृह्यम्"बाट ईकार ऊकारको अनुवृत्ति आवैन, किन्तु एकारको मात्र अनुवृत्ति आउला र यो सूत्रको अर्थ 'अदस् शब्द सम्वन्धी एकार प्रगृह्य संज्ञक होस्' यस्तो होला । यस्तो अर्थ भएपछि 'अमी ईशाः', यहाँ त 'अदे+ईशाः' यस्तो देखेर प्रगृह्यसंज्ञा होला, तर 'रामकृष्णावमू+आसाते' यहाँ 'रामकृष्णावदौ+आसाते' देखेर प्रगृह्यसंज्ञा नहोला र अव्याप्तिदोष आउला । 'अमुके अत्र' यहाँ प्रगृह्यसंज्ञा होला र अतिव्याप्ति दोष आउला । सो नहोस् भन्नाका निमित्त सूत्रमा मात् ग्रहण गऱ्यौं । मात् ग्रहण गरेपछि त्रिपादी सूत्रले गरेको ईत्व ऊत्व 'मात्-ग्रहण-सामर्थ्यात्' सिद्ध भयो र ईकार ऊकारको अनुवृत्ति आयो, अदस्शब्दमा मकारदेखि पर रहेको एकार कहीं नपाइने हुनाले (असंभवात्) अनुवृत्ति आएन र सूत्रको अर्थ अदस् शब्द सम्वन्धी मकारदेखि पर रहेका दीर्घ ईकार दीर्घ ऊकार प्रगृह्यसंज्ञक होऊन् यस्तो भयो । यस्तो अर्थ भएपछि 'अमी+ईशाः' 'रामकृष्णावमू+आसाते' यहाँ मकारदेखि पर रहेका दीर्घ ईकार ऊकार हुनाले प्रगृह्यसंज्ञा, प्रकृतिभाव भयो । 'अमुके+अत्र'मा ककारदेखि पर रहेको एकार हुनाले प्रगृह्यसंज्ञा भएन, "एङः पदान्तादति" ले पूर्वरूप भयो 'अमुकेऽत्र' सिद्ध भयो ।

यस पक्षमा "असति माद्ग्रहण एकारोऽप्यनुवर्तेत" यस वाक्यमा रहेका अपिशब्दको एव

**५३.चादयोऽसत्त्वे १ । ४ । ५७ ॥**
अद्रव्यार्थाश्चादयो निपाताः स्युः ॥
**५४.प्रादयः १ । ४ । ५८ ॥**
एतेऽपि तथा ॥
**५५.निपात एकाजनाङ् १ । १ । १४ ॥**
एकोऽज् निपात आङ्वर्जः प्रगृह्यः स्यात् । इ इन्द्रः । उ उमेशः ।
**(वा.)** 'वाक्यस्मरणयोरङित्'; आ एवं नु मन्यसे । आ एवं किल तत् ।

---

अर्थ गरेपछि 'मात् ग्रहण नगर्ने **हो** भने केवल एकारको मात्र अनुवृत्ति आउला' यस्तो अर्थ हुन्छ र संगति मिल्छ ।

**चादय इति-** द्रव्यभिन्न अर्थलाई कहने चादि निपातसंज्ञक होऊन् ।

**प्रादय इति-** प्रादि पनि निपातसंज्ञक होऊन् ।

**निपात इति-** ङित् आकार भिन्न एक अच् स्वरूप निपात प्रगृह्यसंज्ञक होस् ।

इ इन्द्रः (ओहो इन्द्र) 'इ+इन्द्रः' यस्तो स्थितिमा पूर्ववर्ती 'इ' यसलाई "चादयोऽसत्त्वे" ले निपात संज्ञा भयो । ङित् आकारभिन्न एकअच्रूप निपात भएको हुनाले "निपात एकाजनाङ्"ले प्रगृह्यसंज्ञा पनि भयो । "अकः सवर्णे दीर्घः" ले पाएको दीर्घ एकादेशलाई बाधेर पूर्व इकारको "प्लुतप्रगृह्या अचि नित्यम्"ले प्रकृतिभाव भयो । प्रकृतिभाव भनेको के हो ? जस्ताको तस्तै रहनु अतः 'इ इन्द्रः' यस्तै रह्यो ।

**उ उमेशः** (शिवजी हुनुहुन्छ कि ? "उ+उमेशः" यस्तो स्थितिमा उ लाई "चादयोऽसत्त्वे" ले निपात संज्ञा भए पछि "निपात एकाजनाङ्"ले प्रगृह्यसंज्ञा भयो । "प्लुतप्रगृह्या अचि नित्यम्"ले सवर्ण दीर्घलाई बाधेर प्रकृतिभाव भयो, 'उ उमेशः' यस्तै रह्यो ।

**(वा.) "वाक्यस्मरणयोरिति**[१८] - पूर्वोपक्रान्तवाक्यार्थको अनभिमतत्वद्योतक आकार र स्मरणरूपअर्थको द्योतक आकार पनि ङित् भिन्न जान्नु । पूर्वोपक्रान्त वाक्यार्थको अनभिमतत्व द्योतक आकार भनेको पहिले आरम्भ गरेर बोल्दै आएको कुरामा सहमत नभएको भाव झल्काउने आकार भनेको हो । आ एवं नु मन्यसे (हँ यस्तो ठान्छौ र ?) भन्दा यहाँ 'आ'कारले पूर्वोपक्रान्त वाक्यार्थको अनभिमतत्व बुझाउँछ ।

**आ एवं नु मन्यसे-** (आ यस्तो ठान्छौ र ?) 'आ+ एवं नु मन्यसे' यहाँ "चादयोऽसत्त्वे" ले आ यसको निपात संज्ञा भएपछि 'वाक्यस्मरणयोरङित्' यस वार्तिक अनुसार पूर्वोपक्रान्त-वाक्यार्थको अनभिमतत्वद्योतक आकार छ र ङित्भिन्न एकअच्रूप निपात भएको हुनाले "निपात एकाजनाङ्" ले 'आ' यसलाई प्रगृह्यसंज्ञा भयो अनि 'वृद्धिरेचि'ले पाएको वृद्धिलाई बाधेर 'प्लुतगृह्या अचि नित्यम्'ले प्रकृतिभाव भयो 'आ एवं नु मन्यसे' यस्तै रह्यो ।

**आ- एवं किल तत्-** (आ त्यो कुरा त यस्तो पो रहेछ ?) अहिले बल्ल सम्झें । "आ+ एवं किल तत्" यहाँ आ यसलाई "चादयोऽसत्त्वे"ले निपात संज्ञा भयो अनि "वाक्यस्मरणयोरङित्" यो वार्तिक अनुसार स्मरणरूप अर्थको द्योतक आकार भएको हुनाले ङित्भिन्न एक अच्रूप निपात छ र "निपात एकाजनाङ्" ले प्रगृह्यसंज्ञा भयो, 'वृद्धिरेचि'ले पाएको वृद्धिलाई बाधेर "प्लुतप्रगृह्या अचि

---

१८ अयं भाष्यश्लोकस्य चरमः पादः । पूर्णः श्लोकस्त्वित्थमस्ति-
"ईषदर्थे क्रियायोगे मर्यादाभिविधौ च यः । एतमातं ङितं विद्याद्वाक्यस्मरणयोरङित् ॥" इति ।

अन्यत्र ङित्; । आ ईषदुष्णम् ओष्णम् ॥

**५६.ओत् १ । १ । १५ ॥**

ओदन्तो निपातः प्रगृह्यः स्यात् । अहो ईशाः ॥

**५७.सम्बुद्धौ शाकल्यस्येतावनार्षे १ । १ । १६ ॥**

सम्वुद्धिनिमित्तक ओकारो वा प्रगृह्योऽवैदिके इतौ परे ।

---

नित्यम्" ले प्रकृतिभाव भयो । जस्ताको तस्तै रह्यो, सन्धिकार्य भएन । 'आ एवं नु मन्यसे' सिद्ध भयो ।

**अन्यत्र ङिदिति-** पूर्वोपक्रान्तवाक्यार्थको अनभिमतत्वद्योतक आकार र स्मरणरूप अर्थको द्योतक आकारबाहेक अरू अर्थमा रहेको आकार ङित् हुन्छ । ङित् आकार चार प्रकारको छ- १) ईषदर्थमा रहेको, २) क्रियासँग जोडिने, ३) मर्यादा अर्थमा रहेको, ४) अभिविधि अर्थमा रहेको, अर्थात् यो आकार आङ् हुन्छ । आङ्का ङकारको "हलन्त्यम्" ले इत्संज्ञा भएर लोप भएको हुन्छ । ङित् आकार आङ् प्रादिभित्र पर्ने हुनाले "प्रादयः" ले निपातसंज्ञा हुन्छ । अङित् आकारलाई "चादयोऽसत्त्वे"ले निपात संज्ञा हुन्छ ।

आ ईषदुष्णम्= ओष्णम् (अलिअलि तातो, मनतातो) 'आ+उष्णम्' यहाँ आकारलाई "प्रादयः" ले निपात संज्ञा भए पनि "वाक्यस्मरणयोरङित्" यस वार्तिकले पूर्वोपक्रान्त वाक्यार्थको अनभिमतत्वद्योतक र स्मरणरूप अर्थद्योतक आकार मात्र ङित् हुन्छ भनेको छ, यहाँ पूर्वोपक्रान्तवाक्यार्थको अनभिमतत्वद्योतक र स्मरणरूप अर्थको द्योतक आकार छैन, ईषदर्थद्योतक आकार छ र ङित् नै छ अतः "निपात एकाजनाङ्"ले प्रगृह्यसंज्ञा भएन र प्रकृतिभाव पनि भएन "आद् गुणः" ले गुण भयो 'ओष्णम्' सिद्ध भयो ।

ईषद् अर्थमा - आ+उष्णम् = ओष्णम् (मनतातो)

क्रियायोगमा - आ+अगच्छत् = आगच्छत् (आयो,) ।

मर्यादा अर्थमा - आ+अम्वुधेः = आम्वुधेः । आम्वुधेर्भारतभूमिः (समुद्रसम्म भारतभूमि छ ।)

अभिविधि अर्थमा आ+अव्जयोनेः = आव्जयोनेः । क्षुद्रप्राणित उपक्रम्य आव्जयोनेः सुखलिप्सा । (क्षुद्रप्राणीदेखि लिएर ब्रह्माजीसम्म सुख पाउने इच्छा हुन्छ ।)

यहाँ मर्यादा र अभिविधि उस्तै उस्तै अर्थ हुन्, तर मर्यादामा तोकिएको अवधि पर रहन्छ । अभिविधिमा भने सो अवधि पनि यतै आउँछ यत्ति फरक छ । जस्तै– "समुद्रसम्म भारतभूमि छ" भन्दा समुद्रदेखि यता भन्ने अर्थ हुन्छ, समुद्र पर रहन्छ । समुद्र सीमा हुन्छ ।

क्षुद्रप्राणीदेखि ब्रह्माजीसम्म सुख पाउने इच्छा हुन्छ, भन्दा ब्रह्माजी पनि सुखको इच्छा गर्छन् भन्ने अर्थ आउँछ । ब्रह्माजी पनि सुख लिप्सा गर्ने भित्र पर्न आउँछन् । स्पष्ट छ । यही मर्यादा र अभिविधिको भिन्नता हो । ईषत् अर्थमा, क्रियायोगमा, मर्यादाअर्थमा, अभिविधिअर्थमा,रहेको आकार ङित् हुन्छ । प्रगृह्यसंज्ञक हुँदैन र सन्धि हुन्छ । वाक्य र स्मरण अर्थमा रहेको आकार अङित् हुन्छ प्रगृह्यसंज्ञक हुन्छ र सन्धि हुँदैन ।

**ओदिति-** ओकार अन्तमा हुने निपात प्रगृह्यसंज्ञक होस् ।

**अहो ईशाः** (अहो मालिकहरू) 'अहो+ईशाः' यहाँ अहो यसलाई "चादयोऽसत्त्वे"ले निपातसंज्ञा भएपछि 'अहो' यो ओकारान्त निपात छ र "ओत्" ले प्रगृह्यसंज्ञा भयो । अहोका ओकारका स्थानमा "एचोऽयवायावः" ले पाएको अव् आदेशलाई बाधेर "प्लुतप्रगृह्या अचि नित्यम्" ले प्रकृतिभाव भयो 'अहो ईशाः' सिद्ध भयो ।

**सम्बुद्धाविति-** संवुद्धिलाई निमित्त मानेर भएको ओकार विकल्पले प्रगृह्यसंज्ञक होस्,

विष्णो इति, विष्ण इति, विष्णविति ॥

**५८. मय उञो वो वा ८ । ३ । ३३ ॥**

मयः परस्य उञो वो वाऽचि । किम्वुक्तम् , किमु उक्तम् ॥

**५९. इकोऽसवर्णे शाकल्यस्य ह्रस्वश्च ६ । १ । १२७ ॥**

पदान्ता इको ह्रस्वा वा स्युरसवर्णेऽचि । ह्रस्वविधिसामर्थ्यान्न स्वरसन्धिः । चक्रि अत्र, चक्रयत्र । पदान्ता इति किम् ! गौर्यौ ।

---

वैदिक भिन्न इति शब्द पर भएमा ।

**विष्णो इति/विष्ण इति/विष्णविति-** 'विष्णो+इति' यहाँ संबुद्धिनिमित्त ओकार छ विष्णोको ओकार वैदिक भिन्न इति शब्द पनि पर छ र ओकारको "संबुद्धौ शाकल्यस्येतावनार्षे" यस सूत्रले विकल्पले प्रगृह्य संज्ञा भयो र "एचोऽयवायावः" यस सूत्रले पाएको अव् आदेशलाई बाँधेर "प्लुतप्रगृह्या अचि नित्यम्" ले प्रकृतिभाव भयो, 'विष्णो इति' यस्तै रह्यो । प्रगृह्यसंज्ञा नभएका पक्षमा अव् आदेश भयो 'विष्णव् इति' भयो, 'लोपः शाकल्यस्य'ले वकारको लोप भयो, 'विष्ण इति' भयो । 'विष्ण+इति' यहाँ "आद्गुणः"ले गुण पाएको "पूर्वत्रासिद्धम्"ले वकारको लोप असिद्ध भएर गुण भएन । 'विष्ण इति' सिद्ध भयो । वकारको लोप नभएको पक्षमा वर्णमेलन भयो । 'विष्णविति' यी तीन रूप सिद्ध भए ।

**मय इति-** मयदेखि पररहेका उञ्को स्थानमा वकार आदेश होस् अच् पर भएमा । **किम्वुक्तम, किमु उक्तम्-** (के भनियो) "किम्+उ+उक्तम्" यहाँ मय् छ किम्को मकार् त्यसदेखि पर रहेको उञ् छ उ त्यसदेखि पर अच् छ उक्तम्को उकार अतः "मय उञो वो वा" ले उकारका स्थानमा वकार आदेश भयो, 'किम्वुक्तम्' सिद्ध भयो । वकार नभएको पक्षमा माझको उ लाई "चादयोऽसत्त्वे"ले निपातसंज्ञा भयो "निपात एकाजनाङ्"ले प्रगृह्यसंज्ञा भयो, "अकः सवर्णे दीर्घः"ले पाएको दीर्घलाई बाधेर "प्लुतप्रगृह्या अचि नित्यम्"ले प्रकृतिभाव भयो, 'किमु उक्तम्' सिद्ध भयो ।

**इकोऽसवर्णे इति** - पदका अन्तमा रहेका इक् जो छन् ह्रस्व विकल्पले होऊन्, सवर्णभिन्न अच् पर भएमा ।

**ह्रस्वविधिसामर्थ्यादिति-** ह्रस्वविधान गर्नाका सामर्थ्यले अच्को सन्धि हुँदैन ।

**चक्रि अत्र/चक्र्यत्र-** (विष्णु यहाँ हुनुहुन्छ) 'चक्री+अत्र' यहाँ पदान्त इक् छ चक्रीको ईकार सवर्ण भिन्न अच् पर छ अत्रको अकार र चक्रीका ईकारको "इको सवर्णे०" ले ह्रस्व भयो, 'चक्रि+अत्र' भयो, यहाँ "इको यणचि" ले यण् पाएकोमा 'ह्रस्वविधान गर्नाका सामर्थ्यले अच्को सन्धि हुँदैन' भनेको हुनाले यण् सन्धिको निषेध भयो । 'चक्रि अत्र', यस्तै रह्यो । ह्रस्व नभएको पक्षमा "इको यणचि"ले यण् भयो 'चक्र्यत्र' यी दुई रूप सिद्ध भए ।

अन्य उदाहरण–

नदी+एधते = नदि एधते, नद्येधते (नदी बढ्छिन्)

धनी+उवाच = धनि उवाच, धन्युवाच (धनीले भने) ।

**पदान्ता इति-** पदान्ता इति किम् ? 'इकोऽसवर्णे०' यस सूत्रमा 'पदान्ताः' यो किन भन्नु ? नभन्ने हो भने, सूत्रको अर्थ होला 'इक् ह्रस्व विकल्पले होऊन्, सवर्णभिन्न अच् पर भएमा' यस्तो अर्थ भए दोषजाला कहाँ ? 'गौरी+औ' यहाँ, यहीं पनि गौरीका ईकारको ह्रस्व होला, सो नहोस् भनेर हामीले 'पदान्ताः' भन्यौ 'पदान्ताः' भने पछि यहाँ 'औ' परराखेर गौरीलाई पदसंज्ञा छैन, अर्थात् गौरीको ईकार पदान्त छैन र ह्रस्व भएन । ह्रस्व नभएकोले "इको यणचि"ले

**वा.**(न समासे) वाप्यश्वः ॥

**६०.अचो रहाभ्यां द्वे ८ । ४ । ४६ ॥**

अचः पराभ्यां रेफहकाराभ्यां परस्य यरो द्वे वा स्तः । गौर्य्यौ ।

**६१.ऋत्यकः ६ । १ । १२८ ॥**

ऋति परे पदान्ता अकः प्रागवद्वा । ब्रह्म ऋषिः, ब्रह्मर्षिः । पदान्ताः किम्! आर्च्छत् ॥

**इत्यचसन्धिप्रकरणम्**

---

यण् भयो, 'गौर्यौ' सिद्ध भयो । ह्रस्व भएको भए ह्रस्वविधानसामर्थ्यात् सन्धि हुने थिएन ।

**(वा.) नेति-** समासमा "इकोऽसवर्णे०"ले गर्ने इक्को ह्रस्व नहोस् ।

**वाप्यश्वः** (तलाउमा घोडा) वाप्यामश्वः यस विग्रहमा 'वापी+ङि+अश्व+सु' यहाँ सप्तमी समास भएर 'वापी+अश्वः' भयो । 'वापी+ अश्वः' यहाँ "इकोऽसवर्णे शाकल्यस्य ह्रस्वश्च" ले अन्तर्वर्तिनी विभक्ति ङि अन्तमा हुनाले वापी यो पदान्त छ र ईकारको ह्रस्व पाएको थियो, "न समासे" यो वार्तिकले 'समासमा इक्को ह्रस्व हुँदैन' भनेको हुनाले ह्रस्व भएन, "इको यणचि"ले यण् भयो 'वाप्यश्वः' सिद्ध भयो ।

अरू उदाहरण– सुध्युपास्यः, मध्वरिः । इत्यादि ।

**अच इति-** अच्देखि पर रहेको रेफ र हकारदेखि पर रहेका यर्को द्वित्व विकल्पले होस् ।

**गौर्य्यौ-** (दुईटी गोरी) 'गौर्य्+औ' यहाँ अच्देखि पर रहेको रेफ छ गौर्को रेफ त्यसदेखि पर रहेको यर् छ यकार र "अचो रहाभ्यां द्वे" ले द्वित्व विकल्पले भयो 'गौर्+य्+य्+औ' वर्णमेलन भयो 'गौर्य्यौ' सिद्ध भयो । "द्वित्व नभएको पक्षमा "गौर्यौ" सिद्ध भयो । द्वित्व भएको देखाउन यहाँ "अचो रहाभ्यां द्वे", यो सूत्र राखिएको हो ।

**ऋत्यक इति-** ह्रस्व ऋकार पर भएमा पदका अन्तमा रहेका अक् ह्रस्व विकल्पले होऊन् ।

**ब्रह्म ऋषिः/ब्रह्मर्षिः** (ब्राम्हण ऋषि) 'ब्रह्मा+ऋषिः' यस स्थितिमा पदान्त अक् ब्रह्माका आकारको ऋकार पर भएको हुनाले "ऋत्यकः" यो सूत्रले ह्रस्व भयो, ह्रस्वविधान गर्नका सामर्थ्यले गुण भएन, 'ब्रह्म ऋषिः' सिद्ध भयो । ह्रस्व नभएका पक्षमा अर् गुण भयो 'ब्रह्मर्षिः' यी दुई रूप सिद्ध भए । न समासे यो वार्तिकले "इकोऽसवर्णे०"लाई नै निषेध गर्छ "ऋत्यकः"लाई गर्दैन ।

**पदान्ताः किमिति-** पदान्ताः किम् ? ऋत्यकः यस सूत्रमा "पदान्ताः" यो पद किन भन्नु ? नभन्ने हो भने सूत्रको अर्थ होला 'ऋकार पर भएमा अक् हरू ह्रस्व होऊन्' यस्तो अर्थ भए दोष जाला कहाँ 'आ+ऋच्छत्' यहाँ, यहाँ पनि आको ह्रस्व होला र सन्धि नभएर 'अ ऋच्छत्' यस्तो अनिष्ट रूप सिद्ध होला, त्यसैले हामीले "पदान्ताः" यो पद पढ्यौं, तब सूत्रको अर्थ भयो पदान्त अक् ह्रस्व होऊन्, अब 'आ+ऋच्छत्' यहाँ आ पदान्त छैन र ह्रस्व भएन । "आटश्च" यो सूत्रले वृद्धि भयो 'आर्च्छत्' सिद्ध भयो ।

**अच्सन्धि समाप्त भयो ।**

---

## अथ हल्सन्धिप्रकरणम्

**६२.स्तोः श्चुना श्चुः ८ । ४ । ४० ॥**

सकारतवर्गयोः शकारचवर्गाभ्यां योगे शकारचवर्गौ स्तः । रामश्शेते । रामश्चिनोति । सच्चित् । शार्ङ्गिञ्जय ॥

**६३.शात् ८ । ४ । ४४ ॥**

शात्परस्य तवर्गस्य श्चुत्वं न स्यात् ।

---

**अब हल्सन्धिप्रकरण आरम्भ हुन्छ**

**स्तोरिति-** दन्त्यसकार तवर्गका स्थानमा, तालव्य शकार चवर्गले योग भएमा, दन्त्य सकारका स्थानमा तालव्य शकार र तवर्गका स्थानमा चवर्ग क्रमैले होउन् । यहाँ "यथासंख्यमनुदेशः समानाम्" यो परिभाषासूत्र लगाएर "स्तोः श्चुना श्चुः" सूत्रको अर्थ गरिएको छ ।

यहाँ स, त, थ, द, ध, न यिनका स्थानमा, शकार र चवर्गले योग भएमा क्रमैले श, च, छ, ज, झ, ञ, यी आदेश हुन्छन् । स्थानी र आदेशमा क्रम रहन्छ । निमित्तमा अर्थात् योग हुने वर्णमा क्रम अपेक्षित छैन । "स्थान्यादेशयोर्यथासङ्ख्यं न तु निमित्तकार्यिणोः" स्थानी र आदेशमा क्रम रहन्छ, निमित्त र कार्यवान्मा क्रम रहँदैन । त्यसबारे "शात्" यो सूत्र ज्ञापक छ । योग पनि पूर्व पर दुवैतर्फ लिइन्छ, यसको प्रमाण पनि "शात्" यो सूत्र नै हो । किनकि पूर्वयोगमा प्राप्त परको श्चुत्व निषेध गरियो । परयोगमा श्चुत्व हुने नै भयो ।

**रामश्शेते** (रामु सुत्छ) 'रामस्+शेते' यस्तो स्थितिमा पर शेतेको तालव्य शकारले योग भएको हुनाले रामस् सकारका स्थानमा यो सूत्र "स्तोःश्चुना श्चुः"ले तालव्य शकार भयो 'रामश्शेते' रूप सिद्ध भयो ।

**रामश्चिनोति** (रामले टिप्छ, जम्मा गर्छ) 'रामस्+चिनोति' यस्तो स्थितिमा पर चिनोतिका चकारको योग भएको हुनाले पूर्वतर्फ रहेको रामस्को सकारका स्थानमा प्रकृत सूत्रले तालव्य शकार भयो 'रामश्चिनोति' सिद्ध भयो ।

**सच्चित्** (सत् र चेतन स्वरूप) 'सत्+चित्' यस्तो स्थितिमा तवर्ग सत्का तकारका स्थानमा, पर चित्को चकार चवर्गले योग छ र यहाँ "स्तोःश्चुना श्चुः" यो सूत्रले श्चुत्व गर्दा सकारका स्थानमा शकार र तवर्ग त,थ,द,ध,नका स्थानमा चवर्ग च,छ,ज,झ,ञ क्रमैले होऊन् भनेकोले सत्का तकारका स्थानमा चकार भयो 'सच्चित्' सिद्ध भयो ।

**शार्ङ्गिञ्जय** (विष्णु भगवान् तपाईंको जय होस्) 'शार्ङ्गिन्+जय' यस्तो स्थितिमा परतिर चवर्ग जयको जकारले योग भएको हुनाले "स्तोः श्चुना श्चुः" यो सूत्रले चुत्व गर्दा पूर्वतर्फको शार्ङ्गिन्को नकार तवर्गको पञ्चम वर्णका स्थानमा चवर्गको पञ्चम वर्ण ञकार भयो 'शार्ङ्गिञ्जय' यो रूप सिद्ध भयो ।

अरू उदाहरण- महत्+छत्रम्=महच्छत्रम् (ठूलो छाता) तत्+चित्रम्= तच्चित्रम् (त्यो चित्र)
विपद्+जालम्= विपज्जालम् (विपत्तिको समूह) याच्+ना= याच्ञा (माग्नु)

**शादिति-** तालव्य शकारदेखि पर रहेका तवर्गका स्थानमा चुत्व नहोस् ।

विश्नः । प्रश्नः ॥

**६४.ष्टुना ष्टुः ८ । ४ । ४१ ॥**

स्तोः ष्टुना योगे ष्टुः स्यात् । रामष्षष्ठः ।रामष्टीकते । पेष्टा । तट्टीका । चक्रिण्ढौकसे ॥

---

[१९] **विश्नः** (गमन=हिंडाइ वा भाषण) । 'विश्+नः' यस्तो स्थितिमा पूर्वतर्फ शकारको योगमा पर रहेको नकारका स्थानमा "स्तोःश्चुना श्चुः"ले चुत्व अर्थात् ञकार पाएकोमा तालव्य शकारदेखि पर रहेको तवर्ग हुनाले "शात्" यो सूत्रले निषेध भयो, 'विश्नः' सिद्ध भयो ।

**प्रश्नः** (पृच्छा=सोध्ने काम) 'प्रश्+नः' यहाँ पनि प्रश् को तालव्य शकारको योग छ 'नः' का नकारका स्थानमा "स्तोःश्चुना श्चुः" ले चुत्व पाएकोमा पूर्ववत् स्थिति हुनाले "शात्" यस सूत्रले निषेध भयो, 'प्रश्नः' यस्तै रह्यो ।

**ष्टुनेति-** दन्त्यसकार र तवर्गका स्थानमा, मूर्धन्यषकार र टवर्गले योग भएमा, दन्त्य सकारका स्थानमा मूर्धन्य षकार र तवर्ग त,थ,द,ध,नका स्थानमा टवर्ग ट, ठ, ड, ढ, ण क्रमैले होऊन् । यो सूत्रको पनि "यथासङ्ख्यमनुदेशः समानाम्" यो परिभाषा सूत्र लगाएर अर्थ गरिएको छ । यहाँ पनि योगमा क्रम अपेक्षित छैन स्थानी र आदेशमा मात्र छ । यसको प्रमाण ष्टुत्व निषेध गर्ने सूत्र "तोःषि" छ । अतः मूर्धन्य षकार टवर्ग ट, ठ, ड, ढ, ण जुनसुकैको योग भएमा पनि सकारका स्थानमा षकार र त, थ, द, ध, न का स्थानमा क्रमैले ट, ठ, ड, ढ, ण हुन्छन् । "स्तोः श्चुना श्चुः"मा जस्तै पूर्व वा परतर्फ योग दुवै लिइन्छ ।

**रामष्षष्ठः** (रामचन्द्र छैटौं अवतार हुन्) 'रामस्+षष्ठः' यस्तो स्थितिमा रामस्का दन्त्य सकारका स्थानमा पर मूर्धन्य षकारको योग भएको हुनाले "ष्टुना-ष्टुः" यो सूत्रले ष्टुत्व भएर षकार भयो 'रामष्षष्ठः' यो रूप सिद्ध भयो ।

**रामष्टीकते-** (राम हिंड्छ) 'रामस्+टीकते' यहाँ रामस्का सकारका स्थानमा पर टीकतेको टकार टवर्ग योग भएको हुनाले "ष्टुना-ष्टुः"ले ष्टुत्व हुँदा षकार आदेश भयो 'रामष्टीकते' सिद्ध भयो ।

**पेष्टा-** (पिसने व्यक्ति=विशेषण, पिस्नेछ=क्रियापद) 'पेष्+ता' यस्तो स्थितिमा पूर्वतर्फ 'पेष्'को मूर्धन्य षकारको योग भएको हुनाले "ष्टुना ष्टुः"ले ष्टुत्व हुँदा परतर्फ रहेको तवर्गको प्रथमवर्ण 'ता'को तकारका स्थानमा टवर्गको प्रथमवर्ण टकार भयो 'पेष्टा' रूप सिद्ध भयो ।

**तट्टीका** 'तत्+टीका' यस्तो स्थितिमा टीकाको टकार टवर्गको योग भएकोले पूर्वको तत्का तकारका स्थानमा "ष्टुना ष्टुः" ले ष्टुत्व-टवर्ग हुँदा क्रमानुसार तवर्गको प्रथम वर्ण तकारका स्थानमा टवर्गको प्रथमवर्ण टकार आदेश भयो "तट्टीका" सिद्ध भयो ।

**चक्रिण्ढौकसे** (चक्रधारी भगवान् तपाइँ जानुहुन्छ ?) 'चक्रिन्+ढौकसे' यस्तो स्थितिमा परतर्फ 'ढौकसे'को ढकार टवर्गको योग हुनाले "ष्टुना ष्टुः"यो सूत्रले ष्टुत्व हुँदा पूर्वतर्फ रहेको तवर्गको पाँचौं वर्ण चक्रिन्का नकारका स्थानमा ट वर्गको पाँचौं वर्ण णकार भयो 'चक्रिण्ढौकसे' यो रूप सिद्ध भयो ।

---

१९ विच्छ गतौ तुदादिः । प्रच्छ ज्ञीप्सायाम् तुदादिः । यजयाचयतेत्यादिना भावे नङ्प्रत्ययः । "च्छोः शूडनुनासिके च" 'च्छ'इत्यस्य शकारः ।

**६५.न पदान्ताट्टोरनाम् ८ । ४ । ४२ ॥**

पदान्ताट्टवर्गात्परस्यानामः स्तोः ष्टुर्न स्यात् । षट् सन्तः । षट् ते । पदान्तात्किम् ! ईट्टे । टोः किम् ! सर्पिष्टमम् ।

---

अरू उदाहरण–

चत्वारस्+षट्पदाः, चत्वारष्षट्पदाः (चार भँवरा) । प्रष्+ता, = प्रष्टा (सोधनेवाला)

मत्+टीका=मट्टीका (मेरो टीका) । अधिष्+थाता=अधिष्ठाता (मालिक) ।

वृढ्+धः= वृढः[२०] (बढेको)

**न पदान्तादिति-** पदान्त टवर्गदेखि पररहेका नाम शब्दको अवयवभिन्न दन्त्य सकार तवर्गका स्थानमा ष्टुत्व नहोस् ।

**षट् सन्तः** (छवटा सज्जन) 'षट्+सन्तः,' यस्तो स्थिति भएमा पूर्वमा षट्को टकार टवर्गको योग हुनाले पररहेको सन्तः को सकारका स्थानमा "ष्टुना ष्टुः" ले पाएको ष्टुत्व पदान्त टवर्ग षट्को टकारदेखि पर रहेको 'सन्तः' को सकार नाम् शब्दको अवयवभिन्न हुनाले "न पदान्ताट्टोरनाम्" यस सूत्रले निषेध भयो 'षट् सन्तः' यस्तै रह्यो ।

**षट् ते** (छवटा उनीहरू) 'षट्+ते' यस्तो स्थितिमा 'षट्' को टकार टवर्गको योगमा 'ते' का तकारका स्थानमा "ष्टुना ष्टुः" ले ष्टुत्व पाएकोमा पदान्त टवर्ग षट्को ट्कारदेखि पररहेको नाम् शब्दको अवयवभिन्न तवर्ग 'ते' को तकार हुनाले "न पदान्ताट्टोरनाम्"ले निषेध भयो, षट् ते यस्तै रह्यो ।

**पदान्तादिति-** पदान्तात् किम् "न पदान्ताट्टोरनाम्" यस सूत्रमा पदान्तात् किन भन्नु ? नभने सूत्रको अर्थ कस्तो होला ? टवर्गदेखि पर रहेका नाम् शब्दको अवयव भिन्न दन्त्य सकार तवर्गको ष्टुत्व नहोस्" यस्तो होला । तब दोषजाला 'ईड्+ते' यहाँ, यहीं पनि ष्टुत्व निषेध होला । सो नहोस् भनेर हामीले 'पदान्तात्' भन्यौ, 'पदान्तात्' भनेपछि पदान्तमारहेका टवर्गदेखि पर रहेका भन्ने अर्थ भयो । 'ईड् ते' यहाँ ते को तकार पदान्त टवर्गदेखि पर छैन अर्थात् यहाँ तेलाई पर राखेर 'ईड्' लाई पदसंज्ञा छैन र ष्टुत्वनिषेध भएन "ष्टुना ष्टुः" ले 'ते'का तकारका स्थानमा ष्टुत्व भएर टकार भयो 'ईड्+टे' भयो । ईड्का डकारका स्थानमा "खरि च" ले चर्त्व भयो 'ईट्टे' सिद्ध भयो ।

**टोः किमिति- टोः किम्**[२१] "न पदान्ताट्टोरनाम्" यस सूत्रमा 'टोः' किन भन्नु नभने पनि "ष्टुना ष्टुः" यो सूत्रबाट ष्टुनाको अनुवृत्ति आउला पञ्चम्यन्ततया विभक्तिविपरिणाम होला र सूत्रको अर्थ 'पदका अन्तमा रहेका मूर्धन्य षकार र टवर्गदेखि पर रहेका नाम् शब्दको अवयव भिन्न सकार तवर्गका स्थानमा ष्टुत्व नहोस्" यस्तो होला, यस्तो अर्थ भएपछि दोष जाला 'सर्पिष्+तमम्' यहाँ, यही पनि पदान्तमूर्धन्य षकार सर्पिष्देखि पर रहेको तवर्ग हुनाले तमम्का

---

२० वृह् धातो क्तः "हो ढः" इति हस्य ढः "झषस्तथोर्धोऽधः" इति तकारस्य धकारः, ततो 'वृढ्+धः' इत्यत्र ष्टुत्वेन धस्य ढः, ततो "ढो ढे लोपः" इति ढकारलोपे 'वृढः' इति रूपम् ।

वृढशब्दः "ढ्रलोपे०" इति सूत्रोदाहरणे मूलेऽपि दत्तोऽस्ति ।

२१ "न पदान्ताट्टोरनाम्" यस सूत्रमा 'टोः' नभनेपछि "सन्नियोगशिष्टानां०" यो न्याय लगाएर "ष्टुनाष्टुः" बाट षकार टवर्ग दुवैको अनुवृत्ति आउँछ । अनि पदान्त षकारको जश्त्व भएर डकार नै हुन्छ । आखिर निषेध टवर्गदेखि पर भएकाको नै हुन्छ कहीं दोष जाँदैन' भन्ने आशय हो ।

तर 'सर्पिष् तमम्' यहाँ आसिद्धत्वात् जश्त्व नहुने हुनाले र ष्टुत्वको निषेध पाउँछ र दोष आउँछ ।

**वा.**(अनाम्नवतिनगरीणामिति वाच्यम्) षण्णाम् । षण्णवतिः । षण्णगर्य्यः ॥

**६६.तोः षि ८ । ४ । ४३ ॥**

न ष्टुत्वम् । सन्षष्ठः ॥

---

तकारको ष्टुत्व नहोला । सो नहोस् भनेर हामीले 'टोः' भन्यौं 'टोः' भनेपछि "ष्टुनाष्टुः"बाट ष्टुनाको अनुवृत्ति आएन र 'पदान्त टवर्गदेखि पर रहेका नाम् शब्दको अवयवभिन्न सकार तवर्गको ष्टुत्व नहोस् भन्ने अर्थ भयो', 'सर्पिष्+तमम्' यहाँ तकार पदान्त टवर्गदेखि पर रहेको छैन मूर्धन्य षकारदेखि पर रहेको छ र ष्टुत्व निषेध भएन, ष्टुत्व नै भयो सर्पिष्टमम् भयो । यहाँ "ह्रस्वात्तादौ तद्धिते" भन्ने सूत्रले गरेको षत्व असिद्ध भएकोले षकारको 'झलां जशोऽन्ते'ले जश्त्व भएन र 'सर्पिष्टमम्' यस्तै रह्यो ।

**अनामिति–** पदान्त टवर्गदेखि पर रहेका नाम्शब्द, नवतिशब्द, नगरीशब्दको अवयव भिन्न दन्त्यसकार तवर्गका स्थानमा ष्टुत्वनिषेध होस् भन्नू ।

**षण्णाम्–** (छ वटाको) [२२]'षड्+नाम्' यस्तो स्थिति भएमा षड्को डकार टवर्गको योग छ र "ष्टुना ष्टुः"ले नाम्का नकारका स्थानमा ष्टुत्व पाएको "न पदान्ताट्टोरनाम्"ले नाम् शब्दको अवयवभिन्न सकार तवर्गको ष्टुत्व निषेध होस् भनेको र 'षड्+नाम्' यहाँ पदान्त टवर्ग षड्को डकारदेखि पर रहेको नाम्शब्दको अवयवभिन्न तवर्ग नभएर नाम्शब्दकै अवयव तवर्ग भएको हुनाले ष्टुत्व निषेध भएन, ष्टुत्व नै भयो 'षड्+णाम्' भयो 'षड्+णाम्' यहाँ "प्रत्यये भाषायां नित्यम्" यस वार्तिकले णाम्को णकार प्रत्ययको अवयव अनुनासिक पर भएकोले यर् षड्को डकारका स्थानमा त्यसको सवर्ण अनुनासिक णकार आदेश नित्य भयो । 'षण्णाम्'सिद्ध भयो ।

**षण्णवतिः / षड्णवतिः–** (छयान्नब्बे) 'षड्+नवतिः' यस्तो स्थितिमा षड्को डकार टवर्ग योगमा नवतिःको नकार तवर्गको स्थानमा ष्टुत्व पाएमा "न पदान्ताट्टोरनाम्"ले निषेध पायो "अनाम्नवतिनगरीणामिति वाच्यम्" यस वार्तिकले नाम्, नवति, नगरी, शब्दको अवयव सकार तवर्ग वाहेक अरूको ष्टुत्व निषेध होस् भनेकोले यहाँ नवतिशब्दको अवयव नै तवर्ग छ र ष्टुत्व निषेध भएन ष्टुत्व नै भयो, 'षड्+णवतिः' भयो । "यरोऽनुनासिकेऽनुनासिको वा" यस सूत्रले 'षड्+णवतिः' यहाँ षड्का डकारका स्थानमा विकल्पले डकारको सवर्ण अनुनासिक णकार भयो 'षण्णवतिः' अनुनासिक नभएमा 'षड्णवतिः'दुई रूपसिद्ध भए ।

**षण्णगर्यः/ षड्णगर्यः** (छ वटा नगरीहरू) 'षड्+नगर्यः' यस्तो स्थितिमा "ष्टुना ष्टुः" ले टवर्ग षड्का डकारको योगमा, नगर्यःका नकारका स्थानमा ष्टुत्व पाएको "न पदान्ताट्टोरनाम्"ले निषेध पायो । यहाँ नगरीशब्दको अवयव तवर्ग हुनाले "अनाम्नवति" यस वार्तिकले पूर्ववत् त्यसको निषेध भयो र "ष्टुना ष्टुः" ले ष्टुत्व नै भएर णकार भयो 'षड्+णगर्यः', यहाँ पनि "यरोऽनुनासिके" ले वैकल्पिक सवर्ण अनुनासिक आदेश भयो "षण्णगर्यः" अनुनासिक नहुँदा "षड्णगर्यः" यसरी दुई रूप भए ।

**तोः षीति–** तवर्गका स्थानमा षकार पर भएमा ष्टुत्व नहोस् ।

**सन् षष्ठः** (छैटौं सज्जन) 'सन्+षष्ठः' यस्तो स्थितिमा परतिर षष्ठःको षकारको योग हुनाले पूर्वतिररहेको तवर्ग सन्का नकारका स्थानमा "ष्टुना ष्टुः"ले ष्टुत्व पाएकोमा यो सूत्रले

---

२२ पद संज्ञा गर्ने सूत्र दुईटा छन् (१) "सुप्तिङन्तं पदम्" (२) "स्वादिष्वसर्वनामस्थाने" यी दुईमा पहिलो सूत्रले सुवन्त र तिङन्तलाई पदसंज्ञा गर्दछ । दोस्रो सूत्रले यकार र अच्आदिमा नहुने सर्वनामस्थानभिन्न, स्वादिप्रत्यय पर भएमा पूर्वको पदसंज्ञा गर्दछ । नाम् यो यकार र अच् आदिमा नहुने सर्वनामस्थानभिन्न स्वादिप्रत्यय पर भएकोले 'षड्'लाई पदसंज्ञा भएकोले षड्को डकार पदान्त छ ।

६७.**झलां जशोऽन्ते** ८ । २ । ३९ ॥

पदान्ते झलां जशः स्युः । वागीशः ॥

६८.**यरोऽनुनासिकेऽनुनासिको वा** ८ । ४ । ४५ ॥

यरः पदान्तस्यानुनासिके परेऽनुनासिको वा स्यात् । एतन्मुरारिः, एतद् मुरारिः ।

---

निषेध भयो र सन्‌का नकारका स्थानमा णकार भएन । 'सन् षष्ठः' यस्तै रह्यो ।

**ष्टुत्व निषेध भएका अरू उदाहरण-** पुष्पात् षट्पद उड्डयते (फूलबाट भमरो उड्छ) । डीङ् धातु भ्वादिमा र दिवादिमा छ । डयते यो रूप भ्वादिको हो । मयूरात् षाण्मातुरोऽवतरति (मयूरबाट कार्तिकेय ओर्लन्छन्) कौटिल्यात् षाड्गुण्यं शिक्षितं चन्द्रगुप्तेन । (कौटिल्यबाट चन्द्रगुप्तले सन्धिविग्रह आदि छ गुण सिकियो)

**झलामिति-** पदान्त झल्‌का स्थानमा जश् आदेश होऊन् ।

[२३] **वागीशः** (बृहस्पति) 'वाक्+ईशः' यस्तो स्थितिमा पदान्त झल् वाक्‌को ककारका स्थानमा "झलां जशोऽन्ते" यो सूत्रले जश्- ज,ब,ग,ड,द, सबै आदेश पायो "स्थानेऽन्तरतमः" यो सूत्र लगाएर स्थानी कण्ठस्थानजन्य ककारका स्थानमा ज,ब,ग,ड,द, मध्ये कण्ठस्थानजन्य 'ग' आदेश भयो 'वागीशः' यो रूप सिद्ध भयो ।

**अन्य उदाहरण-**

दिक्+ईशः= दिगीशः (दिशाहरूका मालिक= दिक्पाल)

जगत्+ईशः= जगदीशः (जगत्‌का मालिक= विष्णु)

चित्+आनन्दः= चिदानन्दः (चैतन्य र आनन्द रूप भगवान्)

परिव्राट्+भ्रमति= परिव्राड् भ्रमति (संन्यासी भ्रमण गर्छन्)

मधुलिट्+गुञ्जति= मधुलिड् गुञ्जति (भँवरा भूँ भूँ गर्छ)

विभ्राट्+उदेति= विभ्राडुदेति (सूर्य उदाउँछन्)

ककुभ्+ईश= ककुबीशः (दिशाका मालिक)

कतिचित्+दिनानि= कतिचिद्दिनानि (केही दिन)

महत्+ऐश्वर्यम्= महदैश्वर्यम् (ठूलो ऐश्वर्य) इत्यादि ।

**यरोऽनुनासिक इति-** पदान्त यर्‌का स्थानमा अनुनासिक पर भएमा, अनुनासिक आदेश विकल्पले होस् ।

**एतन्मुरारिः/एतद् मुरारिः -** (यी विष्णु) 'एतद्+मुरारिः', यस्तो स्थितिमा पदान्त यर् एतद्‌को दकारका स्थानमा अनुनासिक मुरारिको मकार पर भएकोले "यरोऽनुनासिकेऽनुनासिको वा" यस सूत्रले अनुनासिक भनेका अच्, य, व, ल, ञ, म, ङ, ण न पाएकोमा "स्थानेऽन्तरतमः" यो सूत्र लगाएर स्थानीका स्थानले अतिशय तुल्य लृँ लँ न् पायो, नियम भएन । अर्थले तुल्य आदेश गरौं भने, दकारको मात्र अर्थ छैन । अब गुणमा जाँदा गुण भनेको प्रयत्न हो । आभ्यन्तर प्रयत्नमा स्थानी दकारको स्पृष्टप्रयत्न छ । स्पृष्टप्रयत्नवाला दकारका स्थानमा लृँ लँ न मध्ये स्पृष्ट प्रयत्नवाला नकार आदेश भयो 'एतन्मुरारिः' सिद्ध भयो । अनुनासिक नभएको पक्षमा 'एतद् मुरारिः' यो रूप सिद्ध भयो ।

---

२३ वाचाम् ईशः यो विग्रहमा 'वाच् +आम्+ईश+सु' यहाँ षष्ठीसमास भएर विभक्तिलुक् भएको छ । अतः अन्तवर्तिनी विभक्तिलाई आश्रय मानेर वाच् यसलाई पदसंज्ञा हुन्छ ।

**वा**.(प्रत्यये भाषायां नित्यम्) तन्मात्रम् । चिन्मयम् ॥

अरू उदाहरण-
षड्+मुखः=षण्मुखः/षड्मुखः (स्वामी कार्तिक) । षड्+महिला= षण्महिलाः/षड्महिलाः (छवटी स्त्री) । तद्+मे= तन्मे/तद्मे (त्यो मेरो) । धिक्+मूर्खम्= धिङ्मूर्खम् (मूर्खलाई धिक्कार) । सद्+मार्गः= सन्मार्ग/सद्मार्गः (राम्रो बाटो) । मद्+नीतिः= मन्नीतिः/मद्नीतिः (मेरो नीति) । उद्+नतिः= उन्नतिः/उद्नतिः (उन्नति) । दिग्+नायकः= दिङ्नायक/दिग्नायकः (दिशाका मालिक) ।

**(वा.) प्रत्यय इति-** पदान्त यर्का स्थानमा प्रत्ययको अवयव अनुनासिक पर भएमा नित्य अनुनासिक होस् लोकमा ।

**तन्मात्रम्** (त्यतिमात्र) 'तद्+मात्रम्' यस्तो स्थितिमा पदान्त यर् तद्को दकारदेखि मात्रम्को मकार प्रत्ययको अवयव अनुनासिक पर छ, यो लौकिक प्रयोग पनि हो र "यरोऽनुनासिकेऽनुनासिको वा" लाई बाधेर "प्रत्यये भाषायां नित्यम्" यो वार्तिकले तद्का दकारका स्थानमा अनुनासिक भनेका अच् य,व,ल,ञ,म,ङ,ण,न, सबै पायो, कुन आदेश गर्ने ? नियम भएन "स्थानेऽन्तरतमः" लगाउँदा स्थानीका स्थानले अतिशयतुल्य अच्, य,व,ल,ञ,म,ङ,ण,न मध्ये दन्तस्थान भएका लृँ,लँ,न, छन्, यी तीनवटै पायो स्थानबाट पनि नियम भएन । अब अर्थको विचार गर्दा स्थानी तद्का दकारको मात्र अर्थ छैन । अनि गुणमा जानु पर्‍यो । गुण भनेको प्रयत्न हो, आभ्यन्तर प्रयत्नमा दकारको स्पृष्टप्रयत्न छ, प्राप्त भएका आदेश लृँ,लँ,न, मध्ये स्पृष्टप्रयत्न भएको नकार छ र दकारका स्थानमा नकार भयो । "तन्मात्रम्" सिद्ध भयो । यहाँ "तदस्य परिमाणम्" यस अर्थमा "प्रमाणे द्वयसज्दघ्नञ्मात्रचः" यस सूत्रले मात्रच् प्रत्यय भएको हो ।

**चिन्मयम्** (चैतन्यमय) 'चित्+मयम्' यस्तो स्थितिमा पदान्त यर्- चित्को तकारदेखि प्रत्ययको अवयव मयम्को मकार पर छ, यो लौकिक प्रयोग पनि हो र "यरोऽनुनासिके" यो सूत्रलाई बाधेर "प्रत्यये भाषायां नित्यम्" यो वार्तिकले चित्का तकारका स्थानमा अनुनासिक भनेका अच्, य,व,ल,ञ,म,ङ,ण,न, सबै पायो, कुन आदेश गर्ने नियम भएन र पूर्ववत् "स्थानेऽन्तरतमः" लगाएर स्थानले तुल्य लृँ,लँ,न्, पाएकोमा गुण अर्थात् आभ्यन्तर प्रयत्नले अतिशय तुल्य नकार आदेश भयो 'चिन्मयम्'[२४] सिद्ध भयो । यहाँ विकार अर्थमा र प्रकृतवचन अर्थमा हैन । ताद्रूप्य अर्थमा 'मयट्' प्रत्यय भएको हो ।

**अरू उदाहरण-** वाग्+मयम्= वाङ्मयम्= (वाणीको विकार, शास्त्र)
वाग्+मात्रम्= वाङ्मात्रम्= (वाणी मात्र) षड्+णाम्= षण्णाम् (छवटाको)
मृद्+मयम् = मृन्मयम् (माटाको) विकार

**मृन्+मयम्** (माटोबाट बनेको) यहाँ "ऋवर्णान्नस्य णत्वं वाच्यम्" यस वार्तिकले पाएको णत्व "पदान्तस्य" ले निषेध हुने हुँदा 'मृण्मयम्' हुँदैन । "तस्य विकारः" ले षष्ठयन्तदेखि विकार अर्थमा मयट् हुन्छ अन्तवर्तिनी विभक्तिलाई आश्रय मानेर "मृन्" यसलाई पदसंज्ञा हुन्छ । काशिकावृत्तिमा शरादिगणमा "मृन्मयम्" यही पाठ छ ।

२४ चिन्मयमिति- "नित्यं वृद्धशरादिभ्यः" इति सूत्रे नित्यमिति योगविभागात्ताद्रूप्ये मयट् इति बालमनोरमायाम् ।

**६९.तोर्लि** ८ । ४ । ६० ॥

तवर्गस्य लकारे परे परसवर्णः । तल्लयः । विद्वाँल्लिखति । नस्यानुनासिको लः ॥

**७०.उदः स्थास्तम्भोः पूर्वस्य** ८ । ४ । ६१ ॥

उदः परयोः स्थास्तम्भोः पूर्वसर्वर्णः ॥

**७१.तस्मादित्युत्तरस्य** १ । १ । ६९ ॥

पञ्चमीनिर्देशेन क्रियमाणं कार्यं वर्णान्तरेणाव्यवहितस्य परस्य ज्ञेयम् ॥

---

**तोर्लीति**– तवर्गका स्थानमा लकार पर भएमा परसवर्ण होस् ।

**तल्लयः** (त्यसको नाश) 'तद्+लयः' यस्तो स्थिति भएमा तवर्ग छ तद्को दकार लकार पर छ लयको लकार र परको सवर्ण हुँदा लकारका सवर्ण, अनुनासिक र अननुनासिक दुई छन्, दुवै पायो । आन्तरतम्याद् अननुनासिक दकारका स्थानमा अननुनासिक लकार भयो 'तल्लयः', सिद्ध भयो ।

**विद्वाल्ँलिखति**– (विद्वान् लेख्दछन्) 'विद्वान्+लिखति' यस्तो स्थितिमा तवर्ग छ विद्वान्को नकार, लकार पर छ लिखतिको लकार र यस सूत्रले परसवर्ण हुँदा परको लकारको सवर्ण अनुनासिक र अननुनासिक दुवै मध्ये आन्तरतम्याद् अनुनासिक नकारका स्थानमा अनुनासिक लँ भयो "विद्वाल्ँलिखति" सिद्ध भयो ।

**नस्येति**– नकारका स्थानमा अनुनासिक लकार हुन्छ, यो भूतार्थकथन मात्र हो । अनुनासिक र अननुनासिकका भेदले यकार, वकार, लकार, दुई प्रकारका हुन्छन्, भनेकै छ । आन्तरतम्यात् अनुनासिक लकारका स्थानमा अनुनासिक लकार हुन्छ भन्ने कुरा पनि सिद्ध छ ।

**अरू उदाहरण**- तद्+लीन= तल्लीनः (एकाग्र) ।
तद्+लीला= तल्लीला (उनको लीला) ।
धीमान्+लिखति= धीमाल्ँलिखति (बुद्धिमान् लेख्छ) ।
हनूमान्+लङ्कां दहति= हनूमाल्ँलङ्कां दहति (हनूमान्ले लङ्का पोल्छन्) ।
कुशान्+लाति= कुशाल्ँलाति (कुशहरू ल्याउँछ) ।
जगत्+लयः= जगल्लयः (संसारको प्रलय) ।

**उद इति**– उद् उपसर्गदेखि पररहेका स्था धातु र स्तम्भ धातुका स्थानमा पूर्व सवर्ण आदेश होस् ।

"उदः स्थास्तम्भोः पूर्वस्य" मा उदः यो दिग्योगलक्षण पञ्चम्यन्त हो र त्यसका उपपत्तिको निमित्त दिग्वाचक शब्दको अध्याहार गर्नु पऱ्यो कुन शब्दको अध्याहार गर्ने त भने–

**तस्मादिति**– पञ्चम्यन्त पदका निर्देशले विधान गरिने कार्य अर्को वर्णले नछेकिएका पञ्चम्यन्तार्थदेखि परका स्थानमा जान्नु । यो परिभाषा सूत्रलगाउँदा "उदः स्थास्तम्भो पूर्वस्य" यस सूत्रमा पञ्चम्यन्त पद "उदः" यो छ त्यसका निर्देशले विधान गरिने पूर्वसवर्ण कार्य छ । त्यो कार्य अर्का वर्णले नछेकिएको पञ्चम्यन्तार्थदेखि परका स्थानमा जान्नु, भनेकोले "उदः स्थास्तम्भोः पूर्वस्य" सूत्रको अर्थ भयो । उद्उपसर्गदेखि अव्यवहित पर रहेका स्थाधातु र स्तम्भधातुका स्थानमा पूर्वसवर्ण आदेश होस्" । यस्तो अर्थ भएपछि–

**उत्थानम्/उत्थ्थानम्**- 'उद्+स्थानम्' यस्तो स्थितिमा उद्उपसर्गदेखि अव्यवहित पर रहेको स्थाधातु हुनाले 'स्था' यो सबैका स्थानमा पूर्वसवर्ण पायो "अलोऽन्त्यस्य" यो परिभाषा सूत्र लाएर 'स्था' का आकारका स्थानमा पूर्वसवर्ण पायो त्यसलाई बाधेर-

---

**७२.आदेः परस्य १ । १ । ५४ ॥**

परस्य यद्विहितं तत्तस्यादेर्बोध्यम् । इति सस्य थः ।

**७३.झरो झरि सवर्णे ८ । ४ । ६५ ॥**

हलः परस्य झरो वा लोपः सवर्णे झरि ॥

**७४.खरि च ८ । ४ । ५५ ॥**

खरि झलां चरः स्युः । इत्युदो दस्य तः । उत्थानम् । उत्तम्भनम् ॥

---

**आदेरिति–** परबोधक शब्दको उच्चारण गरेर परका स्थानमा जो विधान गरियो, त्यो परको आदि अल्का स्थानमा जान्नू ।

**इतीति–** यो सूत्र लगाएर सकारका स्थानमा थकार हुन्छ ।

यहाँ आदेः परस्य लगाउँदा परबोधक, पर शब्दको उच्चारण गरेर पर-'स्था'का स्थानमा पूर्वसवर्ण विधान गरिएकोछ र त्यसको आदि अल् सकारका स्थानमा पूर्वसवर्ण त, थ, द, ध, न यी जम्मै पायो, यी पाँच वर्ण मध्ये कुन विधान गर्ने भन्ने नियम भएन र नियम गर्ने परिभाषा सूत्र "स्थानेऽन्तरतमः" लगाएर स्थानको विचार गर्दा स्थानी सकार दन्तस्थान भएको छ, आदेश त, थ, द, ध, न सबै दन्तस्थानी छन् नियम भएन । अर्थमा विचार गर्दा सकार मात्रको अर्थ छैन र नियम भएन । अब गुणमा जाँदा स्थानीको गुण आभ्यन्तर प्रयत्नमा स्थानी ईषद्विवृत प्रयत्नवाला र आदेश सबै स्पृष्टप्रयत्नवाला भएकोले नियम भएन । अब बाह्यप्रयत्नमा जानु पर्‍यो बाह्यप्रयत्नमा स्थानी सकारको विवार, श्वास, अघोष, महाप्राण प्रयत्न छ । विवार, श्वास, अघोष, महाप्राण प्रयत्न भएको आदेश त,थ,द,ध,न, मा थकार छ र सकारका स्थानमा थकार भयो । 'उद्+थ्+थानम्' भयो । भएपछि-

**झरो झरीति–** हल् देखि पर रहेका झर् को विकल्पले लोप होस् सवर्ण झर् पर भएमा ।

अब 'उद्+थ्+थानम्' यहाँ "झरो झरि सवर्णे" लगाउँदा हल् उद्को दकारदेखि पर रहेका झर्-थ् को, सवर्ण झर् थानम्को थकार पर हुनाले लोप भयो, 'उद् थानम्'भयो, भएपछि–

**खरिचेति–** खर् पर भएमा झल्का स्थानमा चर् आदेश होऊन् ।

**इतीति–** यो सूत्र लगाएर उद्का दकारका स्थानमा तकार हुन्छ ।

'उद्+थानम्' यहाँ "खरि च" लगाउँदा खर्, पर छ थानम्को थकार र 'झल्-उद्'का दकारका स्थानमा चर् भनेका च,ट,त,क,प,श,ष,स, यी सबै पायो, कसलाई विधान गर्ने ? कसलाई विधान नगर्ने ? यस्तो अनियम भयो र नियम गर्ने परिभाषा सूत्र "स्थानेऽन्तरतमः" लगाउँदा स्थानी उद्का दकारको दन्तस्थान छ, दन्तस्थान भएका चर्– च,ट,त,क,प,श,ष,समा तकार र दन्त्य सकार छन् तकार दन्त्य सकार दुवै पायो, नियम भएन । अर्थमा जाँदा दकारको मात्र अर्थ छैन । अब गुणमा जानु पर्‍यो । गुण भनेको के हो ? प्रयत्न हो, आभ्यन्तर प्रयत्नमा स्थानी दकारको स्पृष्ट प्रयत्न छ, स्पृष्ट प्रयत्न भएको आदेश तकार र दन्त्य सकारमध्ये तकार छ र उद्का दकारका स्थानमा तकार भयो "उत्थानम्" सिद्ध भयो ।

"झरो झरि सवर्णे"ले थकारको लोप नभएको पक्षमा 'उद्+थ्+थानम्' यहाँ "खरि च" ले बीचको थकार-खर् पर हुनाले उद्का दकारका स्थानमा 'चर्-च,ट,त,क,प,श,ष,स' पायो पूर्ववत् "स्थानेऽन्तरतमः" लगाएर तीमध्ये स्थान र प्रयत्नले अतिशय तुल्य तकार भयो 'उत्थ्थानम्' सिद्ध भयो ।

उत्थ्थानम् यहाँ थकारको चर्त्व हुँदैन "खरि च"को दृष्टिमा "पूर्वत्रासिद्धम्" लगाएर "उदः स्थास्तम्भोः पूर्वस्य"ले गरेको पूर्वसवर्ण असिद्ध हुन्छ । थकारलाई सकार नै देख्छ । सकारका स्थानमा चर्त्व गरेर सकार नै विधान गर्नु केही प्रयोजन भएन, अतः चर्त्व हुँदैन । "खरि च"ले

**७५. झयो होऽन्यतरस्याम् ८ । ४ । ६२ ॥**

झयः परस्य हस्य वा पूर्वसवर्णः । नादस्य घोषस्य संवारस्य महाप्राणस्य हस्य तादृशो वर्गचतुर्थः । वाग्घरिः, वाग्हरिः ॥

---

असिद्ध देखे पनि हामीले त सिद्ध थकार नै देख्छौं । अतः उच्चारणमा "उत्थ्थानम्" यस्तै हुन्छ ।

उत्थानम्/उत्थ्थानम् (उन्नति) ।

**उत्तम्भनम्/उत्थ्तम्भनम्**– (उँभो उठाउनु) यी दुई प्रयोग सिद्ध गर्ने प्रक्रिया पनि उत्थानम् उत्थ्थानम्को जस्तै हो । दिग्दर्शन तल गराइन्छ–

'उद्+स्तम्भनम्' यस्तो स्थितिमा पूर्ववत् "उदः स्थास्तम्भोः पूर्वस्य" यो सूत्रले "आदेः परस्य" "स्थानेऽन्तरतमः" दुवै सूत्र लगाएर 'स्तम्भनम्'का सकारका स्थानमा पूर्वसवर्ण थकार भयो, 'उद्+थ्+तम्भनम्' भयो, यहाँ "झरो झरि सवर्णे" ले थकारको विकल्पले लोप भयो, "खरि च" ले उद्का दकारको चर्त्व भएर तकार भयो, 'उत्तम्भनम्' सिद्ध भयो । थकारको लोप नभएको पक्षमा पनि उद्का दकारको "खरि च"ले चर्त्व भयो 'उत्थ्तम्भनम्' सिद्ध भयो । यसरी यी दुवै रूप सिद्ध भए ।

**अरू उदाहरण–**

उद्+स्थित= उत्थितः/उत्थ्थितः (उठेको) ।

उद्+स्थापयति= उत्थापयति/उत्थ्थापयतिः (उठाउँछ) ।

उद्+स्थापकः= उत्थापकः/उत्थ्थापकः (उठाउनेवाला) ।

उद्+स्तब्धः= उत्तब्धः/उत्थ्तब्धः (उठाइएको) ।

उद्+स्तम्भते= उत्तम्भते/उत्थ्तम्भते (उठ्छ) ।

**झयो हेति**– झय्देखि पर रहेका हकारका स्थानमा विकल्पले पूर्वसवर्ण आदेश होस् ।

**संवारेति**– संवार, नाद, घोष, महाप्राणप्रयत्न भएका हकारका स्थानमा त्यस्तै वर्गको चौथो आदेश घकार हुन्छ ।

**वाग्घरिः/वाग्हरिः** (वाणीमा सिंह जस्तै, बोल्न निर्भीक) 'वाग्+हरिः' यस्तो स्थिति भएमा झय् वाग्को गकारदेखि पर रहेको हरिको हकार छ र हकारका स्थानमा "झयो होऽन्यतरस्याम्" यस सूत्रले पूर्वमा रहेका गकारका सवर्ण क, ख, ग, घ, ङ सबै आदेश पायो । "स्थानेऽन्तरतमः" यो सूत्र लगाउँदा स्थानी हकारको स्थानले अतिशय तुल्य सबै भएको र एक अक्षर हकारको मात्र अर्थ नभएकोले गुणमा जाँदा आभ्यन्तर प्रयत्नमा स्थानी हकारको ईषद्विवृतप्रयत्न, आदेश क, ख, ग, घ, ङ, सबैको स्पृष्टप्रयत्न भएकोले कुनै पनि अतिशयतुल्य हुन सकेन । बाह्यप्रयत्नमा स्थानी हकारको संवार, नाद, घोष, महाप्राण प्रयत्न र आदेश क, ख, ग, घ, ङ, मा संवार, नाद, घोष, महाप्राण प्रयत्न भएको घकार हुनाले हकारको घकार अतिशयतुल्य छ र हकारका स्थानमा घकार आदेश भयो 'वाग्घरिः' सिद्ध भयो । पूर्वसवर्ण नभएका पक्षमा 'वाग्हरिः' यस्तै रह्यो । दुई रूप भए ।

यस्तै प्रकारले अरू उदाहरणमा पनि पूर्वसवर्ण हुँदा वर्गको चौथो अक्षर नै अतिशय तुल्य हुन आउने हुन्छ । किनकि वर्गको चौथो अक्षरको संवार, नाद, घोष, महाप्राण प्रयत्न हुन्छ र हकारको पनि । अब हकारदेखि पूर्व कवर्ग भएमा हकारको घकार, चवर्ग भएमा झकार, ट वर्ग भएमा ढकार, तवर्ग भएमा धकार, पवर्ग भएमा भकार हुन्छ ।

**अन्य उदाहरण**– वणिक्+हसति=वणिग्घसति/वणिग्हसति (बनियाँ हाँस्छ)

अच्+हनगमाम्= अज्झनगमाम्/अज्हनगमाम् (अजन्तधातु र हन् गम् धातुको)

**७६.शश्छोऽटि** ८ । ४ । ६३ ॥

पदान्ताज्झयः परस्य शस्य छो वाऽटि । तद् शिव इत्यत्र दस्य श्चुत्वेन जकारे कृते खरि चेति जकारस्य चकारः । तच्छिवः, तच्शिवः । **वा**.(छत्वममीति वाच्यम्) तच्छ्लोकेन ॥

**७७.मोऽनुस्वारः** ८ । ३ । २३ ॥

मान्तस्य पदस्यानुस्वारो हलि । हरिं वन्दे ॥

---

अच्+हलौ=अज्झलौ/अज्हलौ (अच् र हल्)
ब्रह्मविद्+हितम्= ब्रह्मविद्धितम्/ब्रम्हविद्हितम् (ब्रह्मवेत्ताको हित) ककुब्+हस्ती= ककुब्भस्ती/ककुब् हस्ती (दिग्गज) । अप्+हारकः= अब्भारकः/अब्हारक (जल ल्याउने व्यक्ति) एतद्+हनुमच्चरितम्=एतद्धनुमच्चरितम्/एतद् हनुमच्चरितम् (यो हनुमान्को चरित्र हो) उद्+हरति= उद्धरति/उद्हरति (उद्धार गर्छ, उखेल्छ) ।उद्+हसति= उद्धसति/उद्हसति । (अट्टहास गर्छ) इत्यादि ।

**शश्छ इति–** पदका अन्तमा रहेका झय्देखि पर रहेका तालव्य शकारका स्थानमा छकार विकल्पले होस् अट् प्रत्याहार पर भएमा ।

**तद् शिव इति–** 'तद्+शिवः' यहाँ दकारका स्थानमा श्चुत्व गर्नाले जकार गरेपछि "खरि च" ले चर्त्व भएर जकारको चकार हुन्छ । अर्थात् "शश्छोटि", "स्तोः श्चुना श्चुः" "खरि च" यी तीनै सूत्र त्रिपादी हुन् । त्रिपादीमा पूर्वसूत्र भन्दा परसूत्र असिद्ध हुन्छ । सबैभन्दा पर छत्व गर्ने सूत्र छ, त्यसैले छत्व पछाडि हुन्छ । श्चुत्व गर्ने सूत्र भन्दा चर्त्व गर्ने सूत्र पर छ, अतः सबभन्दा पहिले श्चुत्व त्यसपछि चर्त्व त्यसपछि मात्र छत्व हुन्छ भन्ने तात्पर्य हो ।

**तच्छिवः/तच्शिवः** (ती महादेव) 'तद्+शिवः' यस्तो स्थितिमा "स्तोः श्चुना श्चुः" ले श्चुत्व भएर दकारका स्थानमा जकार भयो, जकारका स्थानमा "खरि च" ले चर्त्व भएर चकार भयो, 'तच्+शिवः' भयो, 'तच्+शिवः' यहाँ झय्-तच्को चकारदेखि पर रहेको 'शिवः'को शकारका स्थानमा त्यसदेखि पर इकार-अट् हुनाले "शश्छोऽटि"ले छकार विकल्पले भयो 'तच्छिवः' सिद्ध भयो । छत्व नभएको पक्षमा 'तच्शिवः' यस्तै रह्यो ।

**अरू उदाहरण–** रूग्+शमनम् = रूक्छमनम्/रूक्शमनम् (रोगको शमन) ।
वाग्+शूरः = वाक्छूरः, वाक्शूरः/(वचनमा शूरो) ।
मद्+शयनम् = मच्छयनम्/मच्शयनम्, (मेरो बिछौना) ।
यावद्+शक्यम् = यावच्छक्यम्/यावच्शक्यम् (जति सकिन्छ उति) ।
विश्वसृट्+शेते = विश्वसृट्छेते, विश्वसृट्शेते (ब्रह्मा सुत्छन्) ।
अप्+शान्तिः अप्छान्तिः/अप्शान्तिः (जलको शान्ति) ।

(वा) **छत्वममीति–** पदका अन्तमा रहेका झय् देखि पर रहेका तालव्य शकारका स्थानमा छकार विकल्पले होस्, अम् प्रत्याहार पर भएमा यसो भन्नू । "शश्छोऽटि" यो सूत्र "शश्छोऽमि" यस्तो पढ्नु भन्ने यसको अर्थ हो ।

**तच्छ्लोकेन** 'तद्+श्लोकेन'यस्तो स्थितिमा दकारको श्चुत्व, चर्त्व भएपछि पदान्त झय् तच्को चकारदेखि पर रहेको 'श्लोकेन'को शकारका स्थानमा त्यसदेखि पर "अम्" लकार हुनाले "छत्वममीति वाच्यम्" यस वार्तिकले छकार भयो 'तच्छ्लोकेन' सिद्ध भयो । छत्व नभएका पक्षमा 'तच्श्लोकेन'यो रूप सिद्ध भयो ।

**मोऽन्विति–** मकार अन्त्यमा हुने पदका स्थानमा अनुस्वार होस् हल् पर भएमा ।

**हरिं वन्दे** (हरिलाई नमस्कार गर्छु) 'हरिम्+वन्दे' यस्तो स्थितिमा मकार अन्त्यमा हुने पद

**७८.नश्चापदान्तस्य झलि ८ । ३ । २४ ॥**

नस्य मस्य चापदान्तस्य झल्यनुस्वारः । यशांसि । आकंस्यते । झलि किम्! मन्यते ॥

**७९.अनुस्वारस्य ययि परसवर्णः ८ । ४ । ५८ ॥**

स्पष्टम् । शान्तः ॥

---

छ 'हरिम्' हल् पर छ 'वन्दे'को वकार र हरिम् यो पदको स्थानमा अनुस्वार पाएमा "अलोऽन्त्यस्य" यो परिभाषा सूत्र लगाएर अन्त्य अल् मकारका स्थानमा अनुस्वार भयो 'हरिं वन्दे' सिद्ध भयो । अन्य उदाहरण– गृहम्+गच्छति= गृहं गच्छति (घर जान्छ) पुस्तकम्+पठति=पुस्तकं पठति (पुस्तक पढ्छ) गुरुम्+नमति= गुरुं नमति (गुरुलाई ढोग्छ) सुन्दरम्+भवनम्= सुन्दरं भवनम् (राम्रो घर) रम्यम्+वनम्=रम्यं वनम् (राम्रो वन)

**नश्चेति**– पदान्तमा नरहेको नकार र मकारका स्थानमा अनुस्वार होस्, झल् पर भएमा । यशांसि (कीर्तिहरू) आक्रंस्यते (आक्रमण गर्नेछ) ।

'यशान्+सि', 'आक्रम्+स्यते' यस्तो स्थिति भएमा पदका अन्तमा नरहेको यशान्‌को नकार र 'आक्रम्'को मकारका स्थानमा, नकारदेखि पर 'सि'को सकार र मकारदेखि पर 'स्यते'को सकार झल् भएको हुनाले प्रस्तुत सूत्र "नश्चापदान्तस्य झलि" ले अनुस्वार भयो, 'यशांसि', 'आक्रंस्यते' सिद्ध भयो।

**झलि किमिति**– झलि किम् ? "नश्चापदान्तस्य झलि" यस सूत्रमा झलि किन भन्नु ? नभन्ने हो भने सूत्रको अर्थ- पदका अन्तमा नरहेका नकार र मकारका स्थानमा अनुस्वार होस्, यस्तो होला । यस्तो अर्थ भएपछि दोष जाला कहाँ ? 'मन्+यते' यहाँ । यहीं पनि अनुस्वार भएर 'मंयते' यस्तो अनिष्टरूप सिद्ध होला । सो नहोस् भनेर हामीले झलि पढ्यौं । झलि पढेपछि झल् पर भएमा भन्ने अर्थ भयो, यस्तो अर्थ भएपछि 'मन्+यते' यहाँ मन्‌का नकारदेखि पर झल् छैन र अनुस्वार भएन, 'मन्यते' यस्तै रह्यो ।

**अन्य उदाहरण**– पयान्+सि = पयांसि = (जलहरू) सरान्+सि = सरांसि = (तलाऊहरू)
मनान्+सि = मनांसि = (मनहरू) अनम्+सीत् = अनंसीत् = (नुह्यो)
जिघान्+सा = जिघांसा = (मार्ने इच्छा)

**अनुस्वारस्येति**– अनुस्वारका स्थानमा यय् प्रत्याहार पर भएमा परको सवर्ण अनुनासिक होस् । सूत्रबाट नै अर्थ स्पष्ट छ । यहाँ परसवर्ण होस् भन्दा "स्थानेऽन्तरतमः" लगाउनु पर्छ । परको सवर्ण अनुनासिक होस् भनेपछि "स्थानेऽन्तरतमः" लगाउनु पर्दैन । (यस्तै माथिको सूत्र "यरोऽनुनासिकेऽनुनासिको वा" यसको अर्थमा पनि 'यर्‌को सवर्ण अनुनासिक होस्' भन्ने अर्थ गरेपछि "स्थानेऽन्तरतमः" लगाउनु पर्दैन । शिष्यहरूको बुद्धिवैशद्यका निमित्त "यरोऽनुनासिके०" यो सूत्रमा "स्थानेऽन्तरतमः" लगाएर प्रक्रिया सिद्धि गरिएको छ ।)

**शान्तः** (शान्त) 'शाम्+तः' यस्तो स्थितिमा 'शाम्'का मकारका स्थानमा "नश्चापदान्तस्य झलि"ले अनुस्वार भयो 'शां+तः' भयो । 'शां+तः' यहाँ "अनुस्वारस्य ययि परसवर्णः" ले शांको अनुस्वारदेखि पर त यय् हुनाले तका सवर्ण त,थ,द,ध,न,मध्ये अनुनासिक नकार भयो [२५] 'शान्तः' सिद्ध भयो ।

यहाँ अनुस्वार देखि पर कवर्ग भए अनुस्वारका स्थानमा 'ङ' चवर्ग भए 'ञ' टवर्ग भए 'ण'

---

२५ यहाँ 'शाम्+तः' यस्तो स्थितिमा "नश्चापदान्तस्य झलि"ले अनुस्वार भए जस्तै अरू उदाहरणमा पनि सर्वत्र नकारको स्थानमा उक्त सूत्रले अनुस्वार भएपछि मात्र "अनुस्वारस्य ययि परसवर्णः" यो सूत्रले परसवर्ण हुन्छ ।

**८०.वा पदान्तस्य** ८ । ४ । ५९ ॥

त्वङ्करोषि, त्वं करोषि ॥

**८१.मो राजि समः क्वौ** ८ । ३ । २५ ॥

किवन्ते राजतौ परे समो मस्य म एव स्यात् । सम्राट् ॥

**८२.हे मपरे वा** ८ । ३ । २६ ॥

मपरे हकारे परे मस्य मो वा । किम् ह्मलयति, किं ह्मलयति ॥ **वा.**(यवलपरे यवला वा ।) कियँ ह्यः, किं ह्यः ।

---

तवर्ग भए 'न' पवर्ग भए 'म' हुन्छ य,व,ल, पर भएमा यँ, वँ, लँ, हुन्छन् ।

अरू उदाहरण–

अन्-अं+कितः=अङ्कितः (चिन्ह लगाएको)

अन्-अं+चितः=अञ्चितः (पूजिएको)

कुन्-कुं+ठितः= कुण्ठतः (कुँढिएको)

गुन्-गुं+फितः= गुम्फितः (गाभिएको) इत्यादि ।

**वेति**– पदान्त अनुस्वारका स्थानमा यय् प्रत्याहार पर भएमा परको सवर्ण अनुनासिक विकल्पले होस् । पूर्व सूत्र र यो सूत्र दुवैवाट यो तात्पर्य निस्क्यो कि अपदान्त अनुस्वारका स्थानमा परको सवर्ण अनुनासिक नित्य र पदान्त अनुस्वारका स्थानमा विकल्पले हुन्छ । अपदान्त अनुस्वार "नश्चापदान्तस्य भलि"को र पदान्त अनुस्वार "वा पदान्तस्य" यो सूत्रको विषय हो ।

**त्वङ्करोषि** (तिमी गर्छौ) 'त्वम्+करोषि' यस्तो स्थितिमा "त्वम्" का मकारका स्थानमा "मोऽनुस्वारः"ले अनुस्वार भयो 'त्वं+करोषि' भयो, 'त्वं+करोषि' यहाँ यय् प्रत्याहार करोषिको ककार पर हुनाले त्वंको अनुस्वारका स्थानमा ककारको सवर्ण अनुनासिक ङकार भयो 'त्वङ्करोषि' सिद्ध भयो । परसवर्ण नभएमा 'त्वं करोषि' यस्तै रह्यो यसरी दुई रूप सिद्ध भए ।

**मोराजीति**– क्विप् प्रत्यय अन्त्यमा हुने राज् धातु पर भएमा सम्को मकारका स्थानमा मकार नै होस् ।

**सम्राट्** (चक्रवर्ती राजा) 'सम्+राट्' यस्तो स्थितिमा सम्का मकारका स्थानमा "मोऽनुस्वारः" ले अनुस्वार पायो त्यसलाई वाधेर क्विप् प्रत्यय अन्तमा हुने राज् धातु राट् पर भएको हुनाले सम्का मकारका स्थानमा "मो राजि समः क्वौ" यो सूत्रले मकार नै भयो 'सम्राट्' सिद्ध भयो ।

**हे मपर इति**– मकार पर हुने हकार पर भएमा मकारका स्थानमा मकार विकल्पले होस् ।

**किम् ह्मलयति/किं ह्मलयति** (के चल्छ ?) 'किम्+ ह्मलयति' यहाँ "मोऽनुस्वारः"ले अनुस्वार पायो, त्यसलाई वाधेर मकार पर हुने हकार पर छ, ह्मलयतिको हकार र पूर्वको किम्को मकारका स्थानमा यो सूत्रले मकार विकल्पले भयो, 'किम् ह्मलयति' सिद्ध भयो । मकार नभएको पक्षमा "मोऽनुस्वारः"ले अनुस्वार भयो 'किं ह्मलयति' सिद्ध भयो, यसरी दुई रूप सिद्ध भए ।

(वा.) **यवलपर इति**– यकार वकार लकार पर हुने हकार पर भएमा मकारका स्थानमा क्रमशः अनुनासिक य, व, ल, विकल्पले होऊन् ।

**'कियँ ह्यः', /'किं ह्यः'** (हिजो के भयो) 'किम्+ह्यः' यहाँ 'किम्'का मकारका स्थानमा "मोऽनुस्वारः"ले अनुस्वार पायो त्यसलाई वाधेर यकार पर हुने हकार पर छ 'ह्यः'को हकार र किम्का मकारका स्थानमा अनुनासिक यकार विकल्पले भयो, 'कियँ ह्यः' यकार नभएमा "मोऽनुस्वारः"ले अनुस्वार भयो 'किं ह्यः'यी दुई रूप सिद्ध भए ।

किवँ ह्वलयति, किं ह्वलयति । किलँ ह्लादयति, किं ह्लादयति ॥

**८३.नपरे नः ८ । ३ । २७ ॥**

नपरे हकारे मस्य नो वा । किन् ह्नुते, किं ह्नुते ॥

**८४.आद्यन्तौ टकितौ १ । १ । ४६ ॥**

टित्कितौ यस्योक्तौ तस्य क्रमादाद्यन्तावयवौ स्तः ॥

**८५.ङ्णोः कुक् टुक् शरि ८ । ३ । २८ ॥**

वा स्तः । **वा.**(चयो द्वितीयाः शरि पौष्करसादेरिति वाच्यम् ।) प्राङ्ख् षष्ठः, प्राङ्क्षष्ठः, प्राङ् षष्ठः । सुगण्ठ् षष्ठः, सुगण्ट् षष्ठः, सुगण् षष्ठः ॥

---

**किवँ ह्वलयति/किं ह्वलयति** (के चल्छ ?)– **किलँ ह्लादयति/किं ह्लादयति** (के खुशी गराउँछ) । यी दुई रूप पनि "यवलपरे यवला वा" यो वार्तिक लगाएर सिद्ध हुन्छन् ।

**नपरे इति**– नकारपर हुने हकार पर भएमा मकारका स्थानमा नकार विकल्पले होस् ।

**किन् ह्नुते ?/किं ह्नुते ?** (के लुकाउँछ ?) 'किम्+ह्नुते' यस्तो स्थितिमा 'ह्नुते' यहाँ नकार पर हुने हकार पर छ र "मोऽनुस्वारः"लाई बाधेर यो सूत्रले किम्का मकारका स्थानमा वैकल्पिक नकार भयो, 'किन् ह्नुते' सिद्ध भयो । नत्व नभएमा "मोऽनुस्वारः"ले अनुस्वार भयो 'किं ह्नुते' यसरी दुई रूप सिद्ध भए ।

**आद्यन्ताविति**– टित् र कित् (आगम) जसका भनिएका छन् ती त्यसकै आदि र अन्तको अवयव भएर रहुन्, अर्थात् टित् आगम भए सम्बन्धितको आदिमा र कित् भए संबन्धितको अन्त्यमा रहोस् ।

**ङ्णोरिति**– ङकार र णकारको क्रमैले कुक् आगम र टुक् आगम विकल्पले होऊन्, शर् प्रत्याहार पर भएमा ।

(वा.) **चय इति**– चय्का स्थानमा वर्गको द्वितीय आदेश होस्, शर् पर भएमा, पौष्करसादि ऋषिको मतमा । अर्थात् विकल्पले । यहाँ विकल्पले नभनेर पौष्करसादि ऋषिको नाम ग्रहण गरेको आदरका निमित्त हो ।

**प्राङ् षष्ठः/प्राङ्ख्षष्ठः/प्राङ्क्षष्ठः** (विधिवत् पूजा गर्ने छैटौं पूजारी) 'प्राङ्+षष्ठः' यस्तो स्थिति भएमा षष्ठःको षकार शर् पर भएको हुनाले यस सूत्रले प्राङ्का ङकारको कुक् आगम भयो । ककारको "हलन्त्यम्"ले, उकारको "उपदेशेऽजनुनासिक इत्" ले इत्संज्ञा भयो । दुवै वर्णको (उक्को) लोप भयो 'क्' भयो । "शत्रुवदादेशो मित्रवदागमः" यो परिभाषाले आदेश शत्रुजस्तै सम्बन्धितलाई हटाएर बस्छ, आगम मित्र जस्तै मिलेर बस्छ, भनेको हुनाले यो आगम हो र मिलेर रहने भयो, कता रहने भने "आद्यन्तौ टकितौ" यो सूत्र लाएर कित् हुनाले ङकारको अन्ततर्फ रह्यो, "प्राङ्क्+षष्ठः" यस्तो भयो । अब "चयो द्वितीयाः शरि०" यस वार्तिकले षष्ठः को षकार शर् पर हुनाले चय्-ककारको स्थानमा वर्गको द्वितीय आदेश खकार भयो, 'प्राङ्ख्षष्ठः' सिद्ध भयो । द्वितीय आदेश नभएको पक्षमा 'प्राङ्+क्+षष्ठः' यहाँ क र ष मिलेर क्ष भयो 'प्राङ्क्षष्ठः'भयो । कुक् आगम नभएमा 'प्राङ् षष्ठः' यस्तै रह्यो । यसरी तीन रूप सिद्ध भए ।

**सुगण्ठ् षष्ठः/सुगण्ट्षष्ठः/सुगण् षष्ठः** (राम्रोसँग गिन्ती गर्ने (गणक) छैटौं व्यक्ति)

'सुगण्+षष्ठः' यस्तो स्थितिमा "ङ्णोः कुक्टुक् शरि"ले णकारको टुक् आगम भयो । उक्को इत्संज्ञा, लोप भयो । पूर्ववत् "आद्यन्तौ टकितौ" लगाएर णकारको अन्ततर्फ 'ट्' भयो 'सुगण्ट्+षष्ठः' भयो अनि "चयो द्वितीयाः शरि"ले टकारका स्थानमा टवर्गको द्वितीय 'ठ्' आदेश

**८६.डः सि धुट् ८ । ३ । २९ ॥**

डात्परस्य सस्य धुड्वा । षट्त्सन्तः, षट् सन्तः ॥

**८७.नश्च ८ । ३ । ३० ॥**

नान्तात्परस्य सस्य धुड्वा । सन्त्सः, सन्सः ॥

**८८.शि तुक् ८ । ३ । ३१ ॥**

पदान्तस्य नस्य शे परे तुग्वा । सञ्छम्भुः, सञ्च्छम्भुः, सञ्च्शम्भुः, सञ्शम्भुः ॥

---

विकल्पले हुँदा 'सुगणठ्षष्ठः', सिद्ध भयो । "चयो द्वितीयाः०"ले वर्गको द्वितीय आदेश नभएमा 'सुगणट् षष्ठः' यो रूप सिद्ध भयो । टुक् आगम नभएमा 'सुगण् षष्ठः' यस्तै रह्यो । यसरी तीन रूप सिद्ध भए ।

**अन्य उदाहरण**– प्राङ्+शेते= प्राङ्ख् शेते/प्राङ्क्षेते/प्राङ् शेते (पूजारी सुत्छ)

सुगण्+शयनम्= सुगणठ्शयनम्/सुगणट्शयनम्/सुगण्शयनम् (असल गणितज्ञको बिछौना)

**डःसीति**– डकारदेखि पर रहेको दन्त्य सकारको धुट् आगम विकल्पले होस् ।

**षट्त्सन्तः/षट् सन्तः** (छ वटा सज्जन) 'षड्+सन्तः', यस्तो स्थितिमा षड्का डकारका स्थानमा "खरि च"ले चर्त्व पायो त्यसलाई बाधेर षड्का डकारदेखि पर रहेको 'सन्तः'का सकारको "डः सि धुट्"ले धुट् आगम भयो, टकारको "हलन्त्यम्" ले उकारको "उपदेशे०" ले इत्संज्ञा भयो । "तस्य लोपः" ले लोप भयो । ध् बाँकी रह्यो "आद्यन्तौ टकितौ" लगाएर 'ध्' यो टित् हुनाले सकारको आदिपट्टि हुँदा 'षड्ध्+सन्तः' भयो । अनि पहिले धकारको "खरि च"ले चर्त्व भयो 'षड्त्सन्तः' भयो, पुनः डकारको चर्त्व भयो र 'षट्त्सन्तः' यो रूप सिद्ध भयो । "डः सि धुट्"ले धुट् आगम विकल्पले होस् भन्छ, नभएको पक्षमा षड्का डकारको "खरि च"ले चर्त्व भएर टकार भयो 'षट् सन्तः' यो रूप सिद्ध भयो ।

हुन त यहाँ 'षड्+सन्तः' यस्तो स्थितिमा धुट् गर्नुभन्दा पहिले पनि "खरि च" ले चर्त्व पाउँछ, तर "पूर्वत्रासिद्धम्" लगाएर "डः सि धुट्" भन्दा "खरि च" पर हुनाले असिद्ध हुन्छ र त्यसलाई बाधेर धुट् हुन्छ र धकारको चर्त्व हुन्छ अनि धकारको चर्त्व भएर 'षड् त् सन्तः' यस्तो भएपछि मात्र तकार खर् पर हुनाले डकारको चर्त्व भएर टकार हुन्छ ।

**अरू उदाहरण**– लिट्+सु=लिट्त्सु/लिट्सु (चाटनेवालाहरूमा) षट्+सु=षट्त्सु/षट्सु (छ वटामा)

परिव्राट्+सीदति = परिव्राट्त्सीदति/परिव्राट् सीदति (संन्यासीले दुःख पाउँछ ।)

**नश्चेति**– नकारान्त पददेखि पर रहेका दन्त्य सकारको धुट् आगम विकल्पले होस् ।

**सन्त्सः/सन्सः**– (त्यो सज्जन हो) 'सन् + सः' यस्तो स्थितिमा नकारान्त पद सन्देखि पर रहेको 'सः'का सकारको 'नश्च'ले धुट् आगम भयो, 'उट्' यसको इत्संज्ञा र लोप भयो, 'ध्' बाँकी रह्यो, 'ध' यो टित् हुनाले सकारको आदिपट्टि भयो 'सन्+ध्+सः' भयो "खरि च"ले धकारको चर्त्व भयो 'सन्त्सः' सिद्ध भयो । धुट् आगम न भएमा 'सन्सः' यस्तै रह्यो । यसरी २ रूप सिद्ध भए ।

**अरू उदाहरण**– मतिमान् + सहते = मतिमान्त्सहते, मतिमान् सहते = (बुद्धिमान् सहन्छ)

अबुद्धिमान् + सीदति = अबुद्धिमान्त्सीदति, अबुद्धिमान् सीदति = (मूर्ख दुःख पाउँछ)

**शि तुगिति**– पदान्त नकारको तुक् आगम होस्, तालव्य शकार पर भएमा ।

**सञ्छम्भुः/सञ्च्छम्भुः/सञ्च्शम्भुः/सञ्शम्भुः** (शिव सत् हुन्) 'सन्+शम्भुः', यस्तो स्थितिमा पदान्त नकार छ सन्को नकार, तालव्य शकार पर छ 'शम्भुः' को शकार र सन्का नकारको "शि

**८९. ङमो ह्रस्वादचि ङमुण् नित्यम् ८ । ३ । ३२ ॥**

ह्रस्वात्परो यो ङम् तदन्तं यत्पदं तस्मात्परस्याचो ङमुट् । प्रत्यङ्ङात्मा । सुगण्णीशः । सन्नच्युतः ॥

---

तुक्"ले तुक् आगम भयो, उक् को [२६] अनुवन्ध लोप भयो त् बाँकी रह्यो । "आद्यन्तौ टकितौ" लगाएर 'त्' यो कित् हुनाले नकारको अन्ततर्फ हुँदा "सन्+त्+शम्भुः", भयो । शम्भुको तालव्य शकारको योगमा तकारको "स्तोः श्चुना श्चुः"ले श्चुत्व भयो 'सन्+च्+शम्भुः' भयो । पुनः चकारको योगमा नकारको श्चुत्व भएर ञकार भयो, 'सञ्च्+शम्भुः' भयो, शम्भुका शकारको "शश्छोऽटि" ले वैकल्पिक छत्व भयो, 'सञ्च्+छम्भुः' भयो, "झरो झरि सवर्णे" ले चकारको वैकल्पिक लोप भयो, 'सञ्छम्भुः' यो रूप सिद्ध भयो । चकारको लोप नभएको पक्षमा 'सञ्च्छम्भुः' यो रूप सिद्ध भयो । छत्व नभएको पक्षमा 'सञ्च्शम्भुः', यो रूप सिद्ध भयो । "शि तुक्"ले तुक् आगम नभएको पक्षमा सन्का नकारको "स्तोः श्चुना श्चुः"ले श्चुत्व भएर ञकार भयो 'सञ्शम्भुः' भयो । यसरी चार रूप सिद्ध भए । यहाँ यो सङ्ग्रहश्लोक छ–

ञछौ ञचछा ञचशा ञशाविति चतुष्टयम् ।
रूपाणामिह तुक्छत्वचलोपानां विकल्पनात् ॥

**अरू उदाहरणहरू–**

भवान्+शौरिः=भवाञ्छौरिः/भवाञ्च्छौरिः/भवाञ्च्शौरिः/भवाञ्शौरिः (तपाई शूरको छोरा हुनुहुन्छ)

विद्वान्+शो भते= विद्वाञ्छोभते/विद्वाञ्च्छोभते/विद्वाञ्च् शोभते/विद्वाञ्शोभते (विद्वान् सुहाउँछ)

**ङम इति–** ह्रस्वदेखि पर रहेको जो ङम् प्रत्याहार छ, अर्थात् ङ,ण,न, छ, त्यो अन्तमा हुने जो पद त्यसदेखि पर रहेका अच्को नित्य ङमुट् आगम होस् ।

**प्रत्यङ्ङात्मा** (आत्मा प्रत्येकले सम्मान गरिन्छ । अथवा प्रत्येक प्राणीमारहन्छ ।) 'प्रत्यङ्+आत्मा' यस्तो स्थितिमा ह्रस्वदेखि पर रहेको (ङम् प्रत्याहार) छ, प्रत्यङ्को ङकार तदन्त पद छ प्रत्यङ्, त्यसदेखि पर रहेको अच् छ आत्माको आकार र त्यसको "ङमो ह्रस्वादचि ङमुण्नित्यम्" यो सूत्रले ङमुट् आगम भयो अनुबन्धलोप भयो ङम् बाँकी रह्यो, ङम् यो प्रत्याहार हो र ङम् प्रत्याहारले ङ, ण, न, बुझायो र आत्माका आकारको ङ, ण, न, सबै आगम पायो । "यथासङ्ख्यमनुदेशः समानाम्" लगाउँदा ङकारान्त पददेखि पर रहेका अच्को ङ् आगम णकारान्त पददेखि पर रहेका अच्को ण् आगम नकारान्त पददेखि पर रहेका अच्को न् आगम हुने भयो । यहाँ आत्माको आकार ङकारान्त पददेखि पर रहेको हुनाले ङ् आगम हुने भयो, आदितर्फ गर्ने कि अन्त्यतर्फ गर्ने ? "आद्यन्तौ टकितौ" यो सूत्रले टित् भए आदि अवयव र कित् भए अन्तावयव होस् भन्छ । यो ङकार टित् पनि छैन कित् पनि छैन । यहाँ संज्ञा ङम् हो भने, संज्ञी ङ, ण, न हुन् । ती मध्येको ङ एक हो । संज्ञा 'ङम्' मा टित्त्व छ, विधेयत्व छैन त्यहाँ टित्त्व व्यर्थ छ । संज्ञी ङ, ण, न हुन्, यिनमा विधेयत्व छ टित्त्व छैन, यिनमा टित्त्व हुनु आवश्यक भयो । अतः संज्ञामा रहेको टित्त्व व्यर्थ भएर 'व्यर्थं सत् किञ्चिज्ज्ञापयति' व्यर्थ भएको छँदो केही ज्ञापन गर्दछ भनेकोले यो परिभाषा ज्ञापन गर्‍यो–"संज्ञायां च कृतं टित्त्वं सामर्थ्यात् संज्ञिभिः सह संवध्यते"

---

२६ इतसंज्ञा भएर लोप हुनुलाई अनुबन्धलोप पनि भनिन्छ ।

**९०.समः सुटि ८ । ३ । ५ ॥**
**समो रुः सुटि ॥**

संज्ञामा गरिएको टित्त्व पनि सामर्थ्यले संज्ञीहरूसँग सबद्ध हुन्छ । यो परिभाषा लाएर 'ङम्'मा रहेको टित्त्व धर्म ङ, ण, न, मा पनि आयो, र ङ, ण, न पनि टित् मानिए, र "आद्यन्तौ टकितौ" लाएर आत्माको आदितर्फ 'ङ्' आगम भयो । 'प्रत्यङ्+ङ्+आत्मा' भयो, वर्णमेलन भयो 'प्रत्यङ्ङात्मा' सिद्ध भयो ।

**सुगण्णीशः** (गणितज्ञमा श्रेष्ठ व्यक्ति) 'सुगण्+ईशः' यस्तो स्थितिमा यहाँ ह्रस्वदेखि पर रहेको ङम् छ सुगण्को णकार, तदन्त पद छ सुगण् त्यसदेखि पर रहेको अच् छ, ईशः को ईकार र त्यसको "ङमो ह्रस्वादचि ङमुण्नित्यम्" यो सूत्रले 'ङमुट्' आगम भयो । अनुबन्ध लोप भयो, ङम् भयो 'ङम्' यो प्रत्याहारले - ङ, ण, न, बुझायो ईशका ईकारको ङ, ण, न सबै आगम पायो, पूर्ववत् "यथासङ्ख्यमनुदेशः समानाम्" इत्यादि सूत्र लगाएर पूर्ववत् साधन प्रक्रिया गर्दा ईशका ईकारको आदि अवयव भएर 'ण्' आगम भयो "सुगण्+ण्+ईशः" भयो, वर्णमेलन भयो 'सुगण्णीशः' सिद्ध भयो ।

**सन्नच्युतः** (सत्स्वरूप विष्णु) 'सन्+अच्युतः' यस्तो स्थितिमा यहाँ ह्रस्वदेखि पर रहेको ङम् छ 'सन्'को नकार तदन्त पद छ 'सन्' त्यसदेखि पर छ 'अच्युतः' को अकार र त्यसको "ङमो ह्रस्वादचि ङमुण्नित्यम्" यो सूत्रले ङमुट् आगम भयो । अनुबन्ध लोप भयो ङम् भयो, ङम् यो प्रत्याहारले ङ, ण, न बुझायो । 'अच्युतः' का अकारको ङ, ण, न सबै आगम पायो । पूर्ववत् "यथासङ्ख्यमनुदेशः समानाम्" इत्यादि सूत्र लगाएर सबै साधन प्रक्रिया गर्दा 'ईशः'का ईकारको आदि अवयव भएर 'न्'आगम भयो 'सन्+न्+अच्युतः' भयो । वर्णमेलन भएर 'सन्नच्युतः' सिद्ध भयो ।

**अरू उदाहरण**- गच्छन्+अपि=गच्छन्नपि (जाँदैछ ता पनि),
जानन्+अपि=जानन्नपि (जान्दै छ तापनि, जानेर पनि)
गच्छन्+अस्त=गच्छन्नस्ति (जाँदै छ), स्वपन्+अपि= स्वपन्नपि (सुत्दै पनि)

यस सूत्रमा ङमुट् नित्य हुन्छ भने पनि "इको यणचि" "सुप्तिङन्तं पदम्" "सनाद्यन्ता धातवः" "लिङाशिषि" "तङानावात्मनेपदम्" इत्यादि धेरै सूत्रमा पाणिनिले स्वयं ङमुट् आगम नगरेर प्रयोग गरेका छन् भने, "तदस्यास्त्यस्मिन्निति दशान्ता०:" "तदस्यास्त्यस्मिन्निति०" "स्वामिन्नैश्वर्ये", "विभाषा तृन्नत्रतीक्ष्ण०" "तिङ्ङतिङः" इत्यादि सूत्रमा ङमुट् आगम गरेर प्रयोग गरेका छन्, ङमुट् आगम नभएको ठाउँमा "सूत्राणि छन्दोवद् भवन्ति" भनेर समाधान गरौं भने पनि-

शैषिकान्मतुवर्थीयाच्छैषिको मतुबर्थिकः ।
सरूपः प्रत्ययो नेष्टः सन्नन्तान्न सनिष्यते ॥

यो यौटै कारिकामा 'सन्नन्तात्' यहाँ ङमुट् आगम गरेको,र न 'सनिष्यते' यहाँ नगरेको, यस्तै 'तिङन्त प्रक्रिया' 'तनादयः' 'द्वादशामी सनादयः' इत्यादि स्थानमा पनि ङमुट् आगम नगरेको शिष्टहरूको प्रयोग देखेर यो सूत्रले ङमुट् आगम सबै ठाउँमा हुँदैन, हुने ठाउँमा नित्य हुन्छ, नहुने ठाउँमा हुँदै हुँदैन भन्ने कुरा बुझिन्छ । अनि यो परिभाषा पनि छ "आगमशास्त्रमनित्यम्" अतः हुने ठाउँमा नित्य हुन्छ भन्नको निमित्त सूत्रमा नित्यम् पढिएको हो । "अवङ् स्फोटायनस्य" यो सूत्रमा व्यवस्थित विभाषा भए जस्तै यहाँ व्यवस्थित नित्यत्व भएको बुझिन्छ ।

**समः सुटीति**- सम् शब्दका मकारको स्थानमा रु आदेश होस् सुट् पर भएमा ।

**९१.अत्रानुनासिकः पूर्वस्य तु वा ८ । ३ । २ ॥**

अत्र रुप्रकरणेरोः पूर्वस्यानुनासिको वा ॥

**९२.अनुनासिकात्परोऽनुस्वारः ८ । ३ । ४ ॥**

अनुनासिकं विहायरोः पूर्वस्मात्परोऽनुस्वारागमः ॥

**९३.खरवसानयोर्विसर्जनीयः ८ । ३ । १५ ॥**

खरि अवसाने च पदान्तस्य रेफस्य विसर्गः । **वा.** (संपुंकानां सो वक्तव्यः) । सँस्स्कर्ता, संस्स्कर्ता ॥

---

**अत्राऽनुनासिक इति**– "[२७]मतुवसो रु सम्बुद्धौ छन्दसि" यस रुका प्रकरणमा रुदेखि पूर्वका स्थानमा अनुनासिक विकल्पले होस् ।

[२८]**अनुनासिकादिति**– अनुनासिक भएका पक्षलाई छोडेर रुदेखि जो पूर्व त्यसदेखि पर अनुस्वार आगम होस् ।

**खरवसानयोरिति**– खर् प्रत्याहार पर भएमा र अवसान पर भएमा पदान्त रेफका स्थानमा विसर्ग होस् ।

**(वा) संपुंमिति**– सं शब्द पुं शब्द कान् शब्द सम्बन्धी विसर्गका स्थानमा दन्त्य सकार नित्य होस् भन्नु ।

**सँस्स्कर्ता/संस्स्कर्ता** (राम्रो गराउने) 'सम्+कर्ता' यस्तो स्थितिमा "संपरिभ्यां करोतौ भूषणे" ले सुट् भयो 'सम्+स्कर्ता' भयो तब "समःसुटि" ले मकारका स्थानमा रु आदेश भयो उकारको इत्संज्ञा र लोप भयो 'संर्+स्कर्ता' भयो भएपछि–

'सर+स्कर्ता' यहाँ "मतुवसो रु. सम्बुद्धौ छन्दसि" यस सूत्रको प्रकरणमा "समः सुटि" ले गरेको रु छ सर्को रेफ अतः, त्यसदेखि पूर्वको अकारका स्थानमा "अत्रानुनासिक०"ले अनुनासिक भनेका अच्,य,व,ल,ञ,म,ङ,ण,न, सबै पायो । कुन गर्ने भन्ने नियम भएन र "स्थानेऽन्तरतमः" लगाएर स्थानीको स्थानले अतिशय तुल्य कण्ठस्थानी अँ,आँ,आँ३, ङ छन् चारवटै पायो नियम भएन । अर्थले तुल्य आदेश गरौं भने अ को मात्र अर्थ छैन । अब गुणमा जानु पऱ्यो, गुण भनेको के हो प्रयत्न, आभ्यन्तर प्रयत्नमा अकारको के प्रयत्न ? विवृत प्रयत्न, विवृत प्रयत्न भएको अँ,आँ,आँ३ यी तीनवटै छन्, तीनवटै पायो, आभ्यन्तर प्रयत्नबाट पनि नियम भएन । बाह्यप्रयत्नमा जानु पऱ्यो, बाह्यप्रयत्नमा स्थानी अकारको संवार नाद घोष अल्पप्राण प्रयत्न छ भने अँ,आँ,आँ३ यी तीनवटैको संवार नाद घोष अल्प प्राण प्रयत्न छ, अतः यहाँ पनि नियम भएन । प्रमाणमा जानु पऱ्यो, प्रमाण भनेको के हो ? मात्रा, स्थानीमा सका अकारको कतिमात्रा छ ? एकमात्रा, एकमात्रा भएको अँ,आँ,आँ३मा अँ छ र सका अकारका स्थानमा अनुनासिक 'अँ' भयो 'सँर्+स्कर्ता' भयो । अनुनासिक नभएका पक्षमा–

अब 'सर्+स्कर्ता' यहाँ रु छ सर्को रेफ त्यसदेखि पूर्व छ अकार र त्यसदेखि पर "अनुनासिकात्परोऽनुस्वारः"ले अनुस्वार आगम हुँदा 'संर्+स्कर्ता' भयो । अब 'सँर्+स्कर्ता', 'संर्+स्कर्ता' दुवै पक्षमा । पूर्वोक्त दुवै स्थानमा खर् स्कर्ताको सकार पर छ, पदान्तरेफ सँर्, संर् दुवै स्थलमा "खरवसानयोर्विसजनीयः" यसले विसर्ग भयो 'सँः+स्कर्ता', 'संः+स्कर्ता' भयो । विसर्गका स्थानमा "विसर्जनीयस्य सः" (आगामी सूत्र) ले दन्त्य सकार पायो, त्यसलाई बाधेर

---

२७ 'रु' आदेशका प्रकरण दुई छन्- एक "ससजुषो रुः ८।२।६६" बाट शुरु हुने रु आदेश र अर्को "मतुवसो रुः सम्बुद्धौ छन्दसि ८।३।१।" बाट शुरु भएर "कानाम्रेडिते ८।३।१२" सम्मका सूत्रले गर्ने रु आदेश । यो दोस्रो प्रकरणमा विधान गरिने रुदेखि पूर्वका स्थानमा अनुनासिक हुन्छ ।

२८ 'अनुनासिकात्' यो ल्यप्को लोपमा पञ्चमी भएको हो । अतः अनुनासिकं विहाय यो अर्थ हुन्छ ।

**९४.पुमः खय्यम्परे ८ । ३ । ६ ॥**

अम्परे खयि पुमो रुः । पुँस्कोकिलः, पुंस्कोकिलः ॥

**९५.नश्छव्यप्रशान् ८ । ३ । ७ ॥**

अम्परे छवि नान्तस्य पदस्य रुः; न तु प्रशान्शब्दस्य ॥

**९६.विसर्जनीयस्य सः ८ । ३ । ३४ ॥**

खरि । चक्रिँस्त्रायस्व, चक्रिंस्त्रायस्व ।

---

"वा शरि ले" वैकल्पिक विसर्ग पायो, त्यसलाई पनि बाधेर-

अनि "संपुंकानां सो वक्तव्यः" यो वार्तिकले 'सँः+स्कर्ता', 'संः+स्कर्ता', दुवै विसर्गका ठाउँमा 'सं'शब्द सम्बन्धी विसर्ग छ र नित्य दन्त्य सकार भयो 'सँस्स्कर्ता' 'संस्स्कर्ता' यी दुई रूप सिद्ध भए । (यहाँ "अनचि च"ले सकारको द्वित्व अनुस्वारको द्वित्व, ककारको द्वित्व तकारको द्वित्व र विकल्पका भेदले १०८ रूप सिद्धान्त कौमुदीमा बताएको छ ) । "समो वा लोपमेके" भन्ने यो भाष्यको वचन हुनाले पहिलो सकारको लोप भएको रूप पनि हुन्छ । त्यसैको प्रयोग नै प्रचलनमा प्रायः देखिन्छ ।

**अन्य उदाहरण-** सम्+स्कारः= सँस्कारः/संस्स्कारः (राम्रा बनाउनू)<br>
सम्+स्कृतम्= सँस्कृतम्/संस्स्कृतम् (संस्कार गरिएको)<br>
सम्+स्करोति= सँस्करोति/संस्स्करोति (संस्कार गर्छ)

**पुम इति-** अम् प्रत्याहार पर हुने खय् प्रत्याहार पर भएमा पुम् शब्दका मकारका स्थानमा रु आदेश होस् ।

**पुँस्कोकिलः/पुंस्कोकिलः** (भाले कोइली) 'पुम्+कोकिलः' यस्तो स्थिति भएमा पुम्का मकारदेखि अम् (ओकार) पर हुने खय्, 'कोकिलः'को ककार पर हुनाले "पुमः खय्यम्परे" यस सूत्रले मकारका स्थानमा रु भयो अनुबन्धलोप भयो 'पुर्+कोकिलः' भयो पुका, उकारका, स्थानमा "अत्राऽनुनासिक पूर्वस्य तु वा" यो सूत्रले अनुनासिक भनेका अच्, य,व,ल, ञ,म,ङ,ण,न सबै पायो, नियम भएन । पूर्ववत् "स्थानेऽन्तरतमः" यो सूत्र लगाएर स्थानी उकारको स्थान, गुण र प्रमाणले अतिशयतुल्य अनुनासिक उँ आदेश भयो, 'पुँर्+कोकिल' अनुनासिक नभएको पक्षमा "अनुनासिकात्परोऽनुस्वारः" ले पुका उकारदेखि पर अनुस्वार आगम भयो 'पुंर्+कोकिलः' दुवै पक्षमा "खरवसानयोः०" ले रेफको स्थानमा विसर्ग आदेश भयो । "विसर्जनीयस्य सः" "कुप्वोः =क=पौ च" यी दुवै सूत्रलाई बाधेर उभयपक्षमा "संपुंकानां सो वक्तव्यः" यस वार्तिकले सकार भयो "पुँस्कोकिलः"/"पुंस्कोकिलः" दुवै रूप सिद्ध भए ।

**अन्य उदाहरण-** पुम्+छविः, पुँश्छविः/पुंश्छविः (पुरूषको कान्ति)<br>
पुम्+क्रिया पुँस्क्रिया/पुँस्क्रिया (पुरूषको काम)<br>
पुम्+तृतीयः पुँस्तृतीयः/पुंस्तृतीयः (पुरूषमा तेस्रो)

**नश्छवीति-** अम् प्रत्याहार पर हुने छव् प्रत्याहार पर भएमा नकारान्त पदका स्थानमा रु आदेश होस् प्रशान् शब्दका स्थानमा त नहोस् ।

**विसर्जनीयस्येति-** विसर्गका स्थानमा दन्त्य सकार होस् खर् प्रत्याहार पर भएमा ।

**चक्रिँस्त्रायस्व/चक्रिंस्त्रायस्व-** (चक्रधारी भगवान् रक्षा गर्नुहोस्) 'चक्रिन्+त्रायस्व' यस्तो स्थितिमा भएमा नकारान्त पद छ चक्रिन् अम् प्रत्याहार (रेफ) पर हुने छव् प्रत्याहार पर छ त्रायस्वको तकार र "नश्छव्यप्रशान्" यो सूत्रले "अलोऽन्त्यस्य" सूत्र लगाएर चक्रिन्को अन्त्य

अप्रशान् किम् ! प्रशान् तनोति । पदस्येति किम् ! हन्ति ॥

**९७.नॄन् पे ८ । ३ । १० ॥**

नृनित्यस्य रुर्वा पे ॥

**९८.कुप्वोः =क =पौ च ८ । ३ । ३७ ॥**

कवर्गे पवर्गे च विसर्गस्य = क = पौ स्तः, चाद्विसर्गः । नॄं = पाहि, नॄँः पाहि, नॄं= पाहि, नॄंः पाहि । नॄन्पाहि ॥

---

अल् नकारका स्थानमा रु भयो, अनुबन्धलोप भयो, चक्रिर् त्रायस्व भयो । "अत्रानुनासिक०" यस सूत्रले चक्रिर्का इकारका स्थानमा विकल्पले अनुनासिक भनेका अच् यवल ञ,म,ङ,ण,न, सवै पाएकोमा "स्थानेऽन्तरतमः" लगाएर पूर्ववत् स्थानीको स्थान, गुण र प्रमाणले अतिशय तुल्य इं आदेश भयो, 'चक्रिँर् त्रायस्व' भयो, अनुनासिक नभएका पक्षमा 'चक्रिर्'का इकारदेखि पररेफदेखि पूर्व "अनुनासिकात्परोऽनुस्वारः"ले अनुस्वार आगम भयो, 'चक्रिंर् त्रायस्व' भयो । दुवै स्थलमा "खरवसानयोः०" ले विसर्ग भयो 'चक्रिंः+त्रायस्व', 'चक्रिँः+त्रायस्व' भयो भएपछि दुवै ठाउँमा- विसर्ग छ 'चक्रिँः'को विसर्ग 'चक्रिंः'को विसर्ग, खर् पर छ दुवै ठाउँमा त्रायस्व को तकार र "विसर्जनीयस्य सः"ले विसर्गका स्थानमा दन्त्य सकार हुँदा 'चक्रिँस्त्रायस्व' 'चक्रिंस्त्रायस्व' दुवै रूप सिद्ध भए ।

**अप्रशान् किमिति**– अप्रशान् किम् ? "नश्छव्यप्रशान्" यस सूत्रमा अप्रशान् किन भन्नु ? अप्रशान् नभन्ने हो सूत्रको अर्थ अम्प्रत्याहार पर हुने छव् प्रत्याहार पर भएमा नकारान्त पदको स्थानमा रु आदेश होस् यस्तो होला । यस्तो अर्थ भए दोष जाला कहाँ ? 'प्रशान्+तनोति' यहाँ । यहाँ पनि नकारका स्थानमा रु भइजाला, सो नहोस् भनेर हामीले अप्रशान्, भन्यौं, तव सूत्रमा 'प्रशान् शव्दलाई छोडेर' भन्ने अर्थ भयो, यहाँ प्रशान् शव्दलाई छोडेको छैन, प्रशान् शव्द नै छ र रु भएन 'प्रशान्तनोति' यस्तै रह्यो ।

**पदस्येति किमिति**– पदस्येति किम् ? "नश्छव्यप्रशान्" यस सूत्रमा पदस्य किन भन्नु ? नभन्ने हो भने अम्प्रत्याहार पर हुने छव् प्रत्याहार पर भएको हुनाले 'हन्+ति' यहाँ अपदान्त हन्का नकारका स्थानमा पनि रु होला । सो नहोस् भनेर हामीले पदस्य भन्यौं । पदस्य भने पछि नकारान्तपदको भन्ने अर्थ भयो । हन् यो नकारान्त पद छैन, ति यसलाई पर राखेर हन् लाई पदसंज्ञा छैन र हन्का नकारका स्थानमा रु भएन 'हन्ति' यस्तै रह्यो ।

**अन्य उदाहरण**–

श्रीमान्+चकास्ति=श्रीमाँश्चकास्ति/श्रीमांश्चकास्ति (ऐश्वर्यवान् सुहाउँछ)

मतिमान्+छात्रः= मतिमाँश्छात्रः/मतिमांश्छात्रः (वुद्धिमान् विद्यार्थी)

भवान्+टीकते= भवाँष्टीकते/भवांष्टीकते (तपाइँ जानुहुन्छ)

कस्मिन्+चित्=कस्मिँश्चित्/कस्मिंश्चित् (कसैमा) इत्यादि ।

**नॄन्प इति**– नॄन् शब्दका नकारका स्थानमा रु आदेश होस् पकार पर भएमा ।

"नृनित्यस्य" यसको अर्थ नॄन् यसका स्थानमा भन्ने हुन्छ, तर यहाँ 'नॄन् शब्दका नकारका स्थानमा' यो अर्थ "अलोऽन्त्यस्य" सूत्रको सहयोग पूर्वक गरिएको छ । यस्तै किसिमले अन्यत्र पनि स्थल अनुसार "अलोऽन्त्यस्य"यो परिभाषासूत्र लगाएर अर्थ गरिएको छ ।

**नॄं =पाहि/नॄँः पाहि/नॄं =पाहि/नॄंः पाहि/नॄन् पाहि**– 'नॄन्+पाहि' यस्तो स्थितिमा 'पाहि'का

---

**९९.तस्य परमाम्रेडितम्** ८ । १ । २ ॥
द्विरुक्तस्य परमाम्रेडितं स्यात् ।
**१००.कानाम्रेडिते** ८ । ३ । १२ ॥
कान्नकारस्य रुः स्यादाम्रेडिते । काँस्कान्, कांस्कान् ॥

---

पकार पर भएकोले 'नृन्'का नकारका स्थानमा "नृन्पे" ले रु भयो । उकारको अनुबन्ध लोप भयो पूर्ववत् एक पक्षमा "अत्रानुनासिक०" ले अनुनासिक भनेका अच्,य,व,ल,ञ,म,ङ,ण,न सबै पाएकोमा "स्थानेऽन्तरतमः" लगाएर ऋकारको स्थानमा, स्थान गुण र प्रमाणले अतिशय तुल्य ऋँ भयो 'नृँर्+पाहि' भयो रु नभएको पक्षमा "अनुनासिकात्परोऽनुस्वारः"ले रुदेखि पूर्वको नृर्को ऋकार देखि पर अनुस्वार आगम भयो । "खरवसानयोः०" ले उभयत्र विसर्ग भयो 'नृँः+पाहि', 'नृंः+पाहि' भयो । दुवै ठाउँको विसर्गका स्थानमा "विसर्जनीयस्य सः" ले दन्त्य सकार पायो त्यसलाई बाधेर-

**कुप्व इति**– कवर्ग र पवर्ग पर भएमा विसर्गका स्थानमा क्रमैले जिह्वामूलीय र उपध्मानीय विसर्ग होऊन्, चकार पढ्नाले सामान्य विसर्ग पनि होस् ।

अब नृँः पाहि नृंः पाहि यी दुवै ठाउँमा पवर्ग पर भएको हुनाले उभयत्र सामान्य विसर्गका स्थानमा "कुप्वोः = क=पौ च"ले उपध्मानीय विसर्ग भयो, 'नृँ = पाहि', 'नृं = पाहि' भयो, एक पक्षमा यही सूत्रले सामान्यविसर्ग भयो, 'नृँः पाहि', 'नृंः पाहि' यथावत् रह्यो । रु नभएको पक्षमा 'नृन् पाहि' । यसरी पाँच रूप सिद्ध भए ।

**अरू उदाहरण–**

नृन्+पालयति= 'नृँ...पालयति', 'नृं...पालयति', 'नृँः पालयति', 'नृंः पालयति', 'नृन् पालयति' (मनुष्यलाईरक्षा गर्छ)

नृन्+पीडयति= 'नृँ पीडयति', 'नृं पीडयति', 'नृँः पीडयति', 'नृंः पीडयति', 'नृन् पीडयति' (मानिसलाई दुःख दिन्छ) इत्यादि ।

**तस्येति** - दुई पटक उच्चारण गरिएकाको पल्लो रूप आम्रेडित संज्ञक होस् ।

**कानामिति** - कान् शब्दका नकारका स्थानमा रु होस् आम्रेडितसंज्ञक शब्द पर भएमा ।

**काँस्कान्/कांस्कान्** (कस कसलाई) 'कान्+ कान्' यस्तो स्थितिमा कान् शब्द दुई पटक उच्चारण गरिएको छ र पल्लो कान् शव्दलाई "तस्य परमाम्रेडितम्" यो सूत्रले आम्रेडित संज्ञा भयो, अनि आम्रेडित पर भएकोले पूर्वका कान्का नकारका स्थानमा "कानाम्रेडिते" यो सूत्रले रु भयो अनुबन्धलोप भयो 'कार् कान्' भयो, यहाँ । कार्का आकारका स्थानमा "अत्रानुनासिक पूर्वस्य तु वा"ले अनुनासिक भनेका अच्, य, व, ल, ञ, म, ङ, ण, न सबै आदेश पाएकोमा "स्थानेऽन्तरतमः" लगाएर पूर्ववत् स्थान, गुण र प्रमाणले अतिशय तुल्य अनुनासिक आँ आदेश विकल्पले भयो । आदशे 'काँर्+कान्' भयो । अनुनासिक आदेश नभएका पक्षमा "अनुनासिकात्परोऽनुस्वारः"ले आकारदेखि पर अनुस्वार आगम भयो । अनि दुवै पक्षमा रेफको स्थानमा पूर्ववत् विसर्ग भएपछि 'काँः+कान्' 'कांः+कान्' भयो, अनि "विसर्जनीयस्य सः" "वा शरि" "कुप्वोः कः..पौ च" यी तीनवटै सूत्रलाई बाधेर "संपुंकानां सो वक्तव्यः" यस वार्तिकले विसर्गका स्थानमा दन्त्य सकार भयो, 'काँस्कान्' 'कांस्कान्' यी दुई रूप सिद्ध भए ।

**१०१.छे च ६ । १ । ७३ ॥**

ह्रस्वस्य छे तुक् । शिवच्छाया ॥

**१०२.पदान्ताद्वा ६ । १ । ७६ ॥**

दीर्घात्पदान्ताच्छे तुग् वा । लक्ष्मीच्छाया, लक्ष्मीछाया ॥

**इति हल्सन्धिः॥**

**छे चेति**- ह्रस्वको छकार पर भएमा तुक् आगम होस् ।

**शिवच्छाया** (शिवजीको छाया) 'शिव+छाया' यस्तो स्थितिमा ह्रस्व शिवका अकारको छायाको छकार पर हुनाले "छे च"यो सूत्रले तुक् आगम भयो, अनुवन्धलोप भयो । "आद्यन्तौ टकितौ" लगाएर 'त्' यो शिवका अकारको अन्त्य तर्फ भयो, 'शिवत्+छाया' भयो । "झलां जशोन्ते"ले जश्त्व भयो, 'शिवद्+छाया' भयो । दकारका स्थानमा "स्तोः श्चुना श्चुः" ले श्चुत्व भयोर जकार भयो, 'शिवज्+छाया' भयो । "खरि च"ले जकारको चर्त्व भयो 'शिवच्छाया' यो रूप सिद्ध भयो ।

अरू उदाहरण–

स्व+छाया= स्वच्छाया (आफ्नो छाया)

दर्पण+छाया= दर्पणच्छाया (ऐनाको छाया)

स्व+छात्रः= स्वच्छात्रः (आफ्नो विद्यार्थी),

परि+छेत्तुम्= परिच्छेत्तुम् (नाप्न)

वि+छेदः= विच्छेदः (वियोग),

अनु+छेदः= अनुच्छेदः (दफा)

अव+छेदः= अवच्छेदः (परिमाण) इत्यादि ।

**पदान्तादिति** - पदान्त दीर्घदेखि छकार पर भएमा त्यो दीर्घको तुक् आगम विकल्पले होस् ।

**लक्ष्मीच्छाया/लक्ष्मीछाया** (लक्ष्मीको छाया) 'लक्ष्मी+छाया' यस्तो स्थितिमा पदान्त दीर्घ छ लक्ष्मीको ईकार, छकार पर छ छायाको छकार र लक्ष्मीका ईकारको "पदान्ताद्वा"ले वैकल्पिक तुक् आगम भयो, अनुबन्ध लोप भयो त् बाँकी रह्यो । यो कित्वात् ईकारको अन्त्यतर्फ भयो 'लक्ष्मीत्+छाया' भयो, अनि तकारका स्थानमा क्रमशः जश्त्व, श्चुत्व,र चर्त्व भयो 'लक्ष्मीच्छाया' सिद्ध भयो । तुक् नभएको पक्षमा 'लक्ष्मीछाया' यस्तैरह्यो, यसरी दुई रूप सिद्ध भए ।

**हल्सन्धि समाप्त भयो ।**

## अथ विसर्गसन्धिः

(९६. **विसर्जनीयस्य सः** ८ । ३ । ३४ ॥ खरि)
विष्णुस्त्राता ॥
१०३. **वा शरि** ८ । ३ । ३६ ॥
शरि विसर्गस्य विसर्गो वा । हरिः शेते, हरिश्शेते ॥
१०४. **ससजुषो रुः** ८ । २ । ६६ ॥
पदान्तस्य सस्य सजुषश्च रुः स्यात् ॥
१०५. **अतोरोरप्लुतादप्लुते** ६ । १ । ११३ ॥
अप्लुतादतः परस्य रोरुः स्यादप्लुतेऽति । शिवोऽर्च्यः ॥

---

**अब विसर्गसन्धि आरम्भ गरिन्छ -**

**विसर्जनीयस्येति-** विसर्गका स्थानमा दन्त्य सकार होस् खर् पर भएमा ।

**विष्णुस्त्राता** (विष्णुरक्षक छन्) 'विष्णुः+त्राता' यस्तो स्थितिमा 'विष्णुः' का विसर्गका स्थानमा त्राताको तकार खर् पर भएकोले 'विसर्जनीयस्य सः' यो सूत्रले दन्त्य सकार भयो 'विष्णुस्त्राता' सिद्ध भयो ।

**अन्य उदाहरण-** रामः+तिष्ठति=रामस्तिष्ठति (राम रहन्छ)। हरिः+छिनत्ति= हरिश्छिनत्ति (हरिले काट्छ) । वृषः+ चरति= वृषश्चरति (गोरु चर्छ) । द्वादशः+ठकारः= द्वादशष्ठकारः (कादिवर्णमा बाह्रौं ठकार छ) । सप्तदशः+ थकार= सप्तदशस्थकारः (कादिवर्णमा सत्रौं थकार छ) । रामः+टीकते=रामष्टीकते (राम हिँड्छ) इत्यादि ।

**वा शरीति-** शर् पर भएमा विसर्गका स्थानमा विसर्ग विकल्पले होस् ।

**हरिः शेते/हरिश्शेते** (विष्णु भगवान् सुत्नु हुन्छ) 'हरिः+शेते' यस्तो स्थिति भएमा "विसर्जनीयस्य सः" ले 'हरिः' का विसर्गका स्थानमा दन्त्य सकार पायो त्यसलाई बाधेर "वा शरि" ले शर् 'शेते'को शकार पर हुनाले विसर्गका स्थानमा विसर्ग नै हुंदा 'हरिः शेते', यो रूप सिद्ध भयो, "वा शरि"ले विसर्ग नभएमा "विसर्जनीयस्य सः" ले दन्त्य सकार भयो । "स्तोः श्चुना श्चुः" ले श्चुत्व भएर दन्त्य सकारका स्थानमा तालव्य शकार भयो, 'हरिश्शेते' यो अर्को रूप सिद्ध भयो, यसरी दुई रूप सिद्ध भए ।

अन्य उदाहरण-
रामः शेते=रामः शेते/रामश्शेते (राम सुत्छ) ।
छात्रः+शृणोति= छात्रः शृणोति/छात्रश्शृणोति (छात्र सुन्छ)
सन्तः+ सन्ति= सन्तः सन्ति/सन्तस्सन्ति (सज्जन छन्)
रामः+षष्ठः= रामः षष्ठः/रामष्षष्ठः (राम छैटौं अवतार हुन्)

**ससजुषोरिति-** पदका अन्तमा रहेको दन्त्यसकार र सजुष् शब्द सम्वन्धी मूर्धन्यषकारका स्थानमा रु आदेश होस् ।

**अतोरोरिति-** प्लुतभिन्न ह्रस्व अकारदेखि पर रहेको उकारानुबन्ध रेफका स्थानमा उकार आदेश होस् प्लुतभिन्न ह्रस्व अकार पर भएमा ।

**शिवोऽर्च्यः** (शिवजी पूजनीय छन्) 'शिवस्+ अर्च्यः' यस्तो स्थितिमा शिवस्को सकार पदान्त

**१०६.हशि च ६ । १ । ११४ ॥**

तथा । शिवो वन्द्यः ॥

**१०७.भोभगोअघोअपूर्वस्य योऽशि ८ । ३ । १७ ॥**

एतत्पूर्वस्य रोर्यादेशोऽशि ।

---

छ र त्यसका स्थानमा "ससजुषो रुः" ले रु भयो उकारको इत्संज्ञा र लोप भयो 'शिवर्+अर्च्यः' यस्तो भयो अनि- यहाँ शिवर्को रेफ प्लुतभिन्न ह्रस्व शिवको अकारदेखि पर रहेको उकारानुवन्ध रेफ हुनाले र त्यसदेखि पर पनि प्लुत भिन्न ह्रस्व, अकार हुनाले रेफका स्थानमा प्रकृत सूत्र "अतो रोरप्लुतादप्लुते" ले उ भयोर 'शिव+उ अर्च्यः' यस्तो भयो, अव 'शिव+ उ' यहाँ "आद् गुणः" ले गुण पायो 'उ+ अर्च्यः' यहाँ "इको यणचि"ले यण् पायो, कुन पहिले गर्ने त नियम भएन । नियम गर्न (पूर्वोपस्थितिनिमित्तकत्वमन्तरङ्गत्वम्, परोपस्थितिनिमित्तकत्वं वहिरङ्गत्वम्, असिद्ध बहिरङ्गमन्तरङ्गे) पहिले उपस्थिति हुने निमित्त भएको कार्य अन्तरङ्ग र पछि उपस्थिति हुने निमित्त भएको कार्य वहिरङ्ग हुन्छ, अन्तरङ्ग कार्य गर्दा वहिरङ्ग असिद्ध हुन्छ यो परिभाषा लगाएपछि यहाँ पहिले उपस्थिति हुने निमित्त भएको कार्य गुण र पछि उपस्थिति हुने निमित्त भएको कार्य यण् भएको हुनाले अन्तरङ्ग-गुणकार्यका दृष्टिमा वहिरङ्ग-यणकार्य असिद्ध भयो र पहिले "आद् गुणः"ले गुण भयो, 'शिवो+अर्च्यः' भयो । "एङः पदान्तादति" ले पूर्वरूप भयो 'शिवोऽर्च्यः' सिद्ध भयो ।

अरू उदाहरण- सस्+ अपि= सोऽपि (त्यो पनि) रामस्+अत्र=रामोऽत्र (राम यहाँ छ)
कृष्णस्+अस्ति= कृष्णोऽस्ति (कृष्ण छ) एषस्+अवदत्= एषोऽवदत् (यसले भन्यो) इत्यादि ।

**हशि चेति-** प्लुतभिन्न ह्रस्व अकारदेखि पर रहेको उकारानुबन्ध रेफका स्थानमा उकार आदेश होस् हश् पर भएमा ।

**शिवो वन्द्यः** (शिवजी नमस्कारयोग्य छन्) 'शिवस्+वन्द्यः', यस्तो स्थितिमा शिवस्का सकारका स्थानमा "ससजुषो रुः" ले रु भयो 'शिवर्+वन्द्यः' भयो । यहाँ 'शिवर्'को रेफ प्लुत भिन्न ह्रस्व अकारदेखि पर छ, त्यसदेखि पर हश् छ वन्द्यःको वकार, अतः "हशि च" यो सूत्रले रेफका स्थानमा उकार भयो 'शिव+उ+वन्द्यः' भयो 'आद् गुणः'ले गुण भयो, 'शिवो वन्द्यः' सिद्ध भयो ।

अरू उदाहरण- रामस्+गच्छति=रामो गच्छति (राम जान्छ)
छात्रस्+याति= छात्रो याति (छात्र जान्छ)
ईश्वरस्+रक्षति= ईश्वरो रक्षति (ईश्वर रक्षा गर्छन्)
कृष्णस्+ वदति= कृष्णो वदति (कृष्ण भन्छन्)

**भो भगो इति-** भोस् शब्द भगोस् शब्द अघोस् शब्द र अवर्ण पूर्वमा हुने उकारानुवन्ध रेफका स्थानमा यकार आदेश होस् अश् पर भएमा ।[२९]

**देवा इह/देवायिह** (देवताहरू यहाँ आउनुहोस्) 'देवास्+इह' यस्तो स्थितिमा 'देवास्' का सकारका स्थानमा "ससजुषो रुः" ले रु भयो, अनुवन्ध लोप भयो, 'देवार्+इह' भयो भएपछि

---

२९ वास्तवमा भोस्, भगोस् र अघोस् यी निपात क्रमशः भवत्, भगवत् र अघवत् शब्दका सम्बोधनसूचक पद हुन् । यसैकारण भोस्को प्रयोग साधारण संबोधनमा, भगोस्को प्रयोग आदरपूर्वकको सम्बोधनमा, अघोष शब्दको प्रयोग तिरस्कारपूर्वकको सम्वोधनमा हुन्छ ।

देवा इह, देवायिह । भोस् भगोस् अघोस् इति सान्ता निपाताः । तेषां रोर्यत्वे कृते ॥

**१०८.हलि सर्वेषाम् ८ । ३ । २२ ॥**

भोभगोअघोअपूर्वस्य यस्य लोपः स्याद्धलि । भो देवाः । भगो नमस्ते । अघो याहि ॥

---

'देवार् इह' यहाँ देवार्को रेफका स्थानमा "भो भगोअघोअपूर्वस्ययोऽशि"ले यकार भयो, देवाय्का यकारको "लोपः शाकल्यस्य"ले विकल्पले लोप भयो 'देवा इह' सिद्ध भयो । यकारको लोप नभएको पक्षमा 'देवाय्+इह' यस्तै छ, यहाँ यकार गएर इकारमा लाग्यो [३०]'देवायिह' भयो यसरी यी दुई रूप सिद्ध भए ।

**भोस्इति**– भोस्, भगोस्, अघोस् यी तीन सकारान्त निपात हुन् । तिनीहरूको रुका स्थानमा यत्व गरेपछि -

**हलीति**– भो शब्द भगो शब्द अघो शब्द र अवर्णपूर्वमा हुने यकारको नित्य लोप होस् हल् पर भएमा ।

**भो देवाः** (हे देवता हो ?) 'भोस्+देवाः', यस्तो स्थितिमा 'भोस्'का सकारका स्थानमा "ससजुषो रुः" ले रु भयो, उकारको अनुबन्धलोप भयो, 'भोर् देवा' भयो । 'भोर्+देवाः' यहाँ भो शब्दपूर्वमा हुने उकारानुबन्ध रेफ भएको र त्यसदेखि पर देवाः, को दकार अश् पर भएकोले "भोभगो अघो अपूर्वस्य योऽशि" यस सूत्रले 'भोर्' का रेफका स्थानमा य् भयो, 'भोय्+देवाः' भयो । "हलि सर्वेषाम्"ले यहाँ भो शब्द पूर्वमा हुने यकार छ, त्यसदेखि पर हल् पनि छ र यकारको लोप भयो 'भो देवाः' सिद्ध भयो ।

**भगो नमस्ते** (भगवान् नमस्कार छ) 'भगोस्+नमस्ते' यस्तो स्थितिमा "ससजुषो रुः" यस सूत्रले सकारका स्थानमा रु भयो, अनुबन्धलोप भयो, 'भगोर्+नमस्ते' भयो । "भोभगोअघो०" यो सूत्रले भगो शब्द पूर्वमा हुने उकारानुबन्ध रेफ भएको र नमस्तेको नकार अश् पर भएकोले रेफका स्थानमा यकार भयो, 'भगोय्+नमस्ते' भयो, यकारको "हलि सर्वेषाम्" ले लोप भयो, 'भगो नमस्ते' सिद्ध भयो ।

**अघो याहि**– (पापी जा !) 'अघोस्+याहि' यस्तो, स्थितिमा अघोस्का सकारका स्थानमा "ससजुषो रुः" ले रु भयो अनुबन्धलोप भयो, 'अघोर्+याहि' भयो, यहाँ अघो शब्द पूर्वमा हुने अश् पर भएको उकारानुबन्ध रेफ छ र त्यसका स्थानमा "भोभगोअघोअपूर्वस्य०" ले यकार भयो, 'अघोय्+याहि' भयो, "हलि सर्वेषाम्" ले यकारको लोप भयो, 'अघो याहि' सिद्ध भयो ।

यहाँ हल् पर भएमा अवर्ण पूर्वमा हुने यकारको लोप भएको एक उदाहरण दिनु आवश्यक छ । त्यो तल दिइन्छ-

**देवा यान्ति**– (देवताहरु जान्छन्) 'देवास्+यान्ति' यस्तो स्थितिमा देवास्का सकारका स्थानमा "ससजुषो रुः" ले रुत्व भयो "भो भगो अघो अपूर्वस्य०" ले रेफका स्थानमा यकार भयो, "हलि सर्वेषाम्" ले यकारको लोप भयो, 'देवा यान्ति' सिद्ध भयो ।

भोस् शब्द पूर्वमा हुने र अवर्णपूर्वमा हुने सकारका स्थानमा रुत्व भएपछि अश् पर छ भने "भोभगोअघोअपूर्वस्य योऽशि"ले यत्व हुन्छ । अश् मध्येको हल् पर भएमा "हलि सर्वेषाम्"ले

---

३० यकारको लोप भएको रूपहरू नै प्रायः प्रयोगमा आउँछन् । यकारको लोप नभएका रूपहरू कहीं कहीं मात्र प्रयोगमा देखिन्छन् ।

**१०९. रोऽसुपि ८ । २ । ६९ ॥**

अह्नो रेफादेशो न तु सुपि । अहरहः । अहर्गणः ॥

---

यकारको नित्य लोप हुन्छ । अच् पर भएमा "लोपः शाकल्यस्य"ले वैकल्पिक लोप हुन्छ । ती उदाहरण धेरै पाइन्छन् । भगोस् शब्द, अघोस् शब्द पूर्वमा हुने उदाहरण धेरै पाइन्नन् । भो शब्द पूर्वमा हुने-र अवर्ण पूर्वमा हुने सकारको रुत्व यत्व र लोप भएका केही उदाहरण तल दिइन्छ ।

भोस्+रामः= भो राम (ए ! राम !)

भोस्+लक्ष्मण ! = भो लक्ष्मण ! (ए ! लक्ष्मण !)

छात्रास्+गच्छन्ति=छात्रा गच्छन्ति (छात्रहरू जान्छन्)

नृपास्+वन्द्याः नृपा वन्द्याः= (राजाहरू वन्दनीय छन्)

दुर्जनास्+हसन्ति= दुर्जना हसन्ति (दुर्जनहरू हाँस्छन्)

सज्जनास्+दयन्ते= सज्जना दयन्ते (सज्जनहरू दया गर्छन्) इत्यादि ।

भोस्, भगोस्, अघोस् शव्द र अवर्ण पूर्वमा भए पनि अश् पर छैन भने त्यहाँ "भोभगोअघोअपूर्वस्य योऽशि" ले यत्व नै हुँदैन । अनि "हलि सर्वेषाम्' लाग्ने कुरै भएन । त्यहाँ अरू प्रक्रियाको ऊह गर्नुपर्दछ ।

**त्यस्ता उदाहरणहरु** - भोस्+छात्रा=भोश्छात्राः (ए विद्यार्थी हो)

भोस्+तस्कर ! = भोस्तस्कर ! (ए चोर !)

भोस्+कृपण ! = भोः कृपण ! (ए छुच्चा !)

भोस् +शङ्कर ! = भोः शङ्कर ! भोश्शङ्कर (ए शिवजी)

**रोऽसुपीति**- अहन् शव्दका नकारका स्थानमा रेफ आदेश होस् सुप् पर भएमा त नहोस् ।

**अहरहः** (दिनदिनै) 'अहन्+अहन्' यस्तो स्थिति भएमा वक्ष्यमाण सूत्र "अहन्" ले "रुत्व" पायो वाधेर दुवै नकारदेखि पर सुप् नभएकोले रेफादेश भयो 'अहर्+अहर्' भयो । पहिलो अहर्को रेफ अकारमा लाग्यो "अहरहर्" भयो अन्तिम रेफको स्थानमा अवसान पर हुनाले "खरवसानयोर्विसर्जनीयः" ले विसर्ग भयो "अहरहः" सिद्ध भयो ।

**अहर्गणः** (दिनहरूको समूह) 'अहन्+गणः' यस्तो स्थितिमा वक्ष्यमाण सूत्र "अहन्"ले रु आदेश पायो, त्यसलाई बाधेर सुप् पर नभएकोले "रोऽसुपि"ले रेफ आदेश भयो । 'अहर्+गणः' यहाँ जलतुम्बिका-न्यायले रेफ शिरमा रह्यो "अहर्गणः" सिद्ध भयो ।

यी दुवै प्रयोगमा उकारानुवन्ध रेफ नभएको हुनाले उत्व भएन । उकारानुवन्ध रेफ भएको भए 'अहर्+अहर्' यहाँ "अतो रोरप्लुतादप्लुते"ले उत्व हुन्थ्यो, 'अहर्+गणः' यहाँ "हशि च"ले उत्व हुन्थ्यो । रु भएमा मात्र उकारानुबन्ध रेफ हुन्छ । यहाँ रेफ आदेश भएको छ । अतः यहाँ ती दुवै सूत्र लागेनन् ।

"रोऽसुपि" ले रेफ भएका अन्य उदाहरण-

अहन्+गतम्=अहर्गतम् (दिन गयो) ।

अहन्+आयाति= अहरायाति (दिन आउँछ) ।

अहन्+विभाति= अहर्विभाति (दिन सुहाउँछ) इत्यादि छन् ।

---

**११०.रो रि ८ । ३ । १४ ॥**

रेफस्य रेफे परे लोपः ॥

**१११.ढ्रलोपे पूर्वस्य दीर्घोऽणः ६ । ३ । १११ ॥**

ढरेफयोर्लोपनिमित्तयोः पूर्वस्याणो दीर्घः । पुना रमते । हरी रम्यः । शम्भू राजते । अणः किम् ! तृढः । वृढः ।

---

**रोरीति**–रेफको लोप होस् रेफ पर भएमा ।

**ढ्रलोप इति**– ढकारको लोपमा निमित्त भएको ढकार र रेफको लोपमा निमित्त भएको रेफ पर भएमा पूर्वका अण्का स्थानमा दीर्घ होस् ।

**पुनारमते**– (फेरि रमाउँछ) 'पुनर्+रमते' यस्तो स्थिति भएमा 'पुनर्' को रेफदेखि रमतेको रेफ पर भएको हुनाले "रो रि" ले पुनर्का रेफको लोप भयो 'पुन+रमते' भयो, यहाँ रेफको लोपमा निमित्त भएको रेफ पर छ रमतेको रेफ र पूर्वको अण्-'पुन'का अकारका स्थानमा "ढ्रलोपे पूर्वस्य दीर्घोऽणः" यो सूत्रले दीर्घ भनेका आ, ई, ऊ, ॠ, ए, ओ, ऐ, औ, सबै पायो नियम भएन । "स्थानेऽन्तरतमः" यो परिभाषा सूत्र लगाएर नियम गर्दा कण्ठस्थानी अकारका स्थानमा कण्ठस्थानी आकार भयो, 'पुना रमते' सिद्ध भयो ।

**हरी रम्यः** (विष्णु भगवान् सुन्दर छन्) 'हरिस्+रम्यः' यस्तो स्थिति भएमा 'हरिस्'का सकारका स्थानमा "ससजुषो रुः"ले रु भयो अनुबन्धलोप भयो 'हरिर् रम्यः' भयो । यहाँ हरिर्का रेफदेखि रम्यको रेफ पर हुनाले "रो रि" ले रेफको लोप भयो, 'हरि+रम्यः' भयो यहाँ रेफका लोपनिमित्तक रेफ पर भएकोले पूर्वको अण् हरिका इकारका स्थानमा "ढ्रलोपे पूर्वस्य दीर्घोऽणः" ले दीर्घ आदेश हुँदा पूर्ववत् आन्तरतम्याद् दीर्घ ईकार भयो 'हरी रम्यः' सिद्ध भयो ।

**शम्भू राजते**– (शिवजी विराजमान हुनुहुन्छ) 'शम्भुस्+राजते' यस्तो स्थिति भएमा "ससजुषो रुः" ले शम्भुस्का सकारका स्थानमा रु भयो, शम्भुर् राजते भयो, भएपछि "रो रि" ले रेफको लोप भयो, "शम्भु राजते" भयो । यहाँ रेफको लोपमा निमित्त भएको रेफ पर छ राजतेको रेफ र पूर्वको अण् शम्भुका उकारका स्थानमा "ढ्रलोपे पूर्वस्य दीर्घोऽणः"ले दीर्घ हुँदा "आन्तरतम्याद्" दीर्घ ऊकार भयो, 'शम्भू राजते' सिद्ध भयो ।

**अणः किमिति**– अणःकिम ? ढ्रलोपे पूर्वस्य दीर्घोऽणः" यस सूत्रमा अणः किन भन्नु ? नभन्ने हो भने "अचश्च" भन्ने सूत्रबाट "अचः" यो षष्ठ्यन्त पद उपस्थित होला र सूत्रको अर्थ ढकारको लोपनिमित्तक ढकार पर भएमा र रेफको लोपमा निमित्त भएको रेफ पर भएमा पूर्वका अच्का स्थानमा दीर्घ होस् यस्तो होला । यस्तो अर्थ भएपछि दोष जाला, 'तृढः', 'वृढः', यहाँ, यहीँ, पनि तृका ऋकार र वृका ऋकारका स्थानमा दीर्घ भएर अनिष्ट रूप सिद्ध होला । सो नहोस् भनेर हामीले 'अणः' भन्यौं । 'अणः' भनेपछि तृ को ऋकार वृ को ऋकार[३१] अण् हैन र दीर्घ भएन, 'तृढः', 'वृढः', यस्तै रह्यो । तृढः= (मारिएको) वृढः (उद्यत भएको)

**अन्य उदाहरण**–

लिढ्+ढः= लीढः (दुई चाट्छन्) अलिढ्+ढ= अलीढ (चाट्यो)

लिढ्+ढात्= लीढात् (चाटोस्)

---

३१ "अणुदित्सवर्णस्य चाप्रत्यः" बाहेक अरू सूत्रमा अण् प्रत्याहार पूर्वको मात्र ग्रहण हुन्छ भनेकोले यहाँ अण् भनेका अ,इ,उ मात्र हुन् ।

मनस् रथ इत्यत्र रुत्वे कृते हशि चेत्युत्वे रोरीति लोपे च प्राप्ते ।

**११२. विप्रतिषेधे परं कार्यम् १ । ४ । २ ॥**

तुल्यवलविरोधे परं कार्यं स्यात् । इति लोपे प्राप्ते पूर्वत्रासिद्धमिति रोरीत्यस्यासिद्धत्वादुत्वमेव । मनोरथः ॥

**११३. एतत्तदोः सुलोपोऽकोरनञ्समासे हलि ६ । १ । १३२ ॥**

अककारयोरेतत्तदोर्यः सुस्तस्य लोपो हलि न तु नञ्समासे । एष विष्णुः । स शम्भुः ।

---

भानुस्+राजते= भानूराजते (सूर्य प्रकाश हुन्छन्)

विष्णुस्+रमते= विष्णू रमते (विष्णु भगवान् क्रीडा गर्नुहुन्छ) इत्यादि ।

**मनस् इति–** 'मनस्+रथ' यहाँ रुत्व गरेपछि "हशि च"ले उत्व र "रो रि" ले रेफको लोप दुवै पाएमा ।

**विप्रतिषेध इति–** तुल्य बल भएका दुई शास्त्रको विरोध भएमा परको कार्य होस् ।

**इतीति–** यो सूत्र लगाएर लोप पाएमा "पूर्वत्रासिद्धम्" यो सूत्रले "रो रि" यो सूत्रको असिद्धत्व प्रतिपादन गर्नाले उत्व नै हुन्छ ।

**मनोरथः** (इच्छा) 'मनस्+रथः' यस्तो स्थितिमा 'मनस्'का सकारका स्थानमा "ससजुषो रुः" ले रु भयो उकारको अनुवन्धलोप भयो, 'मनर्+रथः' भयो । 'मनर्'का रेफका स्थानमा "हशि च" ले उत्व पायो, "रो रि" ले रेफको लोप पनि पायो, कुन गर्ने ? भन्ने अनियम भयो, अनियम भएको ठाउँमा नियम गर्ने परिभाषा सूत्र छ- "विप्रतिषेधे परं कार्यम्" यो सूत्रले तुल्यवल भएका दुई शास्त्रको विरोधमा परको कार्य होस् भन्छ, तुल्यबल भएका दुई शास्त्रको विरोध भनेको "अन्यत्रान्यत्र लब्धावकाशयोः शास्त्रयोरेकस्मिन् लक्ष्ये समावेशः" अर्को अर्को ठाउँमा चरितार्थ भएका दुई शास्त्रको यौटै लक्ष्यमा समावेश हुनु हो, भन्नाले यहाँ "हशि च" यो सूत्र 'शिवो वन्द्यः' आदिमा र "रो रि" 'पुना रमते' आदि ठाउँमा चरितार्थ छ । यी दुई सूत्रको यौटै लक्ष्य 'मनर्+रथः'मा समावेश भएको हुनाले यहाँ तुल्यवल भएका दुई शास्त्रको विरोध भएको छ, त्यस्तो ठाउँमा परको कार्य होस् भनेकोले, परको कार्य रेफको लोप गर्ने कार्य छ, अर्थात् "हशि च" भन्दा "रो रि" पर छ, र रेफको लोप नै पाएमा "पूर्वत्रासिद्धम्" यस सूत्रले सपादी "हशि च" को दृष्टिमा त्रिपादी "रो रि" असिद्ध भयो र त्यसलाई बाधेर "हशि च" ले उत्व भयो, 'मन+उ+रथः' भयो । 'मन+उ' यहाँ "आद्गुणः" ले गुण भयो 'मनोरथः' सिद्ध भयो ।

**एत्तत्तदोरिति–** ककारले रहित भएको एतद् शब्द र तद् शब्दसम्बन्धी जो सु त्यसको लोप होस् हल् पर भएमा, नञ्समासमा त नहोस् ।

**एष विष्णुः** (यी विष्णु हुन्) 'एषस्+विष्णुः' यस्तो स्थिति भएमा यहाँ ककारले रहित एतद् शब्द सम्बन्धी सु 'एषस्'को सकार छ, 'विष्णुः'को वकार हल् पर छ, नञ्समास पनि छैन र "एतत्तदोः०" यस सूत्रले सकारको लोप भयो 'एप विष्णुः' सिद्ध भयो ।

**स शम्भुः** (ती शिव हुन्) 'सस्+शम्भुः' यहाँ ककारले रहित तद् शब्दसम्बन्धी सु 'सस्' को सकार छ, हल् पर छ 'शम्भु' को शकार, नञ्समास पनि छैन र प्रकृत सूत्रले 'सस्' को सकारको लोप भयो 'स शम्भुः' सिद्ध भयो ।

**अकोः किमिति–** "अकोः किम्" "एत्तदोः सुलोपोऽकोरनञ्समासे हलि" यस सूत्रमा अकोः किन भन्नु ? नभने सूत्रको अर्थ "एतद् शब्द र तद् शब्द सम्बन्धी जो सु त्यसको लोप होस् हल्

---

अको: किम् ! एषको रुद्र: । अनञ्समासे किम् ! असः शिवः । हलि किम् ! एषोऽत्र ॥

**११४.सोऽचि लोपे चेत्पादपूरणम् ६ । १ । १३४ ॥**

स इत्यस्य सोर्लोपः स्यादचि पादश्चेल्लोपे सत्येव पूर्येत । सेमामविड्ढि प्रभृतिम् ।

---

पर भएमा नञ् समासमा त नहोस्" यस्तो होला, यस्तो अर्थ भए दोष जाला कहाँ ? 'एषकस्+रुद्र:' यहाँ, यहाँ पनि एतद् शव्दसम्वन्धी सकारको सु हुनाले लोप होला । सो नहोस् भनेर हामीले सूत्रमा 'अको:' भन्यौ । 'अको:' भनेपछि ककारले रहित एतद् शब्द र तद्शव्द सम्वन्धी भन्ने अर्थ भयो, 'एषकस्+रुद्र:' यहाँ ककारले रहित एतद् शब्द तद् शब्द सम्वन्धी सु छैन, ककारले सहित एतद् शब्द सम्वन्धी सु छ र सकारको लोप भएन, रुत्व उत्व गुण भयो 'एषको रुद्र:' सिद्ध भयो ।

**अनञ्समासे किमिति–** अनञ्समासे किम् "एतत्तदोः सुलोपोऽकोरनञ्समासे हलि" यस सूत्रमा अनञ् समासे किन भन्नु ? नभन्ने हो सूत्रको अर्थ 'ककारले रहित एतद् शब्द तद् शब्द सम्वन्धी जो सु त्यसको लोप होस् हल् पर भएमा यस्तो होला', यो अर्थ भए दोष जाला कहाँ ? 'असस्+ शिवः' (त्यो शिव होइन ।) यहाँ, यहीँ पनि ककारले रहित तद् शब्द सम्वन्धी सु छ र लोप भैजाला । सो नहोस् भनेर हामीले सूत्रमा "अनञ्समासे" भन्यौं, यसो भनेपछि नञ्समासमा त नहोस् भन्ने यस्तो अर्थ भयो । 'असस्+शिवः' यहाँ नञ्समास नै छ र सकारको लोप भएन, रुत्व विसर्ग भयो । "विसर्जनीयस्य सः" ले दन्त्य सकार पायो, त्यसलाई वाधेर "वा शरि" ले विसर्गका स्थानमा वैकल्पिक विसर्ग भयो, 'असः शिवः' सिद्ध भयो । विसर्ग नभएका पक्षमा विसर्गका स्थानमा "विसर्जनीयस्य सः"ले सत्व भयो, "स्तोः श्चुना श्चुः"ले श्चुत्व भयो । 'असश्शिवः' यस्तो रूप पनि हुन्छ ।

**हलि किमिति–** हलि किम् ? "एतत्तदोः०" यस सूत्रमा हलि किन भन्नु ? नभन्ने हो भने सूत्रको अर्थ- 'ककारले रहित एतद् शब्द तद् शब्दसम्बन्धी सुको लोप होस् नञ्समासमा त नहोस्' यस्तो होला । यस्तो अर्थ भए दोष जाला कहाँ, 'एषस्+अत्र' यहाँ, यहाँ पनि 'एषस्'को सकारको लोप होला । सो नहोस् भन्ने हेतुले हामीले सूत्रमा "हलि" भन्यौं र हल् पर भएमा भन्ने यस्तो अर्थ भयो, यो अर्थ भएपछि यहाँ 'एषस्'का सकार देखि पर हल् छैन, अच् छ, अत्रको अकार, अतः सकारको लोप भएन । सकारको रुत्व, उत्व, भयो 'एष+उ+अत्र' भयो, यहाँ 'शिव+उ+अर्च्यः'मा झैं गुण, पूर्वरूप, भयो 'एषोऽत्र' सिद्ध भयो । एषोऽत्र (यो यहाँ छ) ।

**अन्य उदाहरण–** एषस्+गच्छति=एष गच्छति (यो जान्छ)

सस्+हरिः= स हरिः (त्यो हरि हो)

एषस्+याति= एष याति (यो जान्छ)

सस्+ करोति= स करोति (त्यो गर्छ)

**सोऽचि लोप इति–** तद् शब्द सम्बन्धी सुको लोप होस् यदि लोप भएमा मात्र पाउ पूर्ण हुन्छ भने ।

**सेमामविड्ढि प्रभृतिम्–** 'सस्+इमामविड्ढि प्रभृतिम्' यहाँ तद् शब्दसम्बन्धी सु छ, अच् पर पनि छ र सस्का सकार लोप गरेमा मात्र पाउ पूर्ण हुन्छ, अर्थात् पाउ मिल्छ, अतः "ससजुषो रुः"ले पाएको रुत्वलाई वाधेर "सोऽचि लोपे०" यस सूत्रले सकारको लोप भयो "आद्गुणः"ले गुण भयो "सेमामविड्ढि प्रभृतिम्" सिद्ध भयो ।

सैष दाशरथीरामः ॥

**इति विसर्गसन्धिः ॥**

ꣻ

---

"सेमामविड्ढि प्रर्भृतिं य ईशिपे" यो जगतीछन्दको एक पाउँ हो । जगती छन्दको १ पाउमा १२ अक्षर हुन्छन् यहाँ सुलोप, गुण हुँदा ठीक १२ अक्षर हुन्छन् र गडबड हुँदैन, । पाउ पूरा हुन्छ । रुत्व यत्व गरेर यकारको लोप गर्दा गुण हुँदैन । "स इमावाविड्ढि प्रभृतिम् य ईशिषे" यस्तो हुन्छ, पाउ पूर्ण (ठीक) हुँदैन, १३ अक्षर हुन्छन्, छन्दो भङ्ग हुन्छ । छन्दो भङ्ग हुनु नै पाउ पूर्ण नहुनु हो । त्यसैले यहाँ सकारको लोप गरेमा मात्र पाउ पूर्ण हुन्छ, अतः सकारको लोप गर्नु पऱ्यो । जहाँ लोप नगर्दा पनि पाउ पूरा हुन्छ त्यहाँ यो सूत्र लाग्दैन । जस्तैः- "सोऽहमाजन्मशुद्धानाम्" यहाँ यो सूत्र लागेन ।

**सस्+एष दाशरथी रामः** सैष दाशरथी रामः= (ती यिनी दशरथका छोरा राम हुन्)

'सस्+एष दाशरथी रामः' यस्तो स्थितिमा तद्शव्द सम्वन्धी सु, सस्को सकार छ अच् पर पनि छ, लोप गरेमा मात्र पाउ पूर्ण हुन्छ र "ससजुपो रुः" लाई वाधेर "सोऽचि लोपे०"ले सकारको लोप भयो, "वृद्धिरेचि" ले वृद्धि भयो, 'सैष दाशरथी रामः' सिद्ध भयो । यहाँ सकारको लोप नगर्दा सस्का सकारको रुत्व यत्व लोप भएमा 'स एष दाशरथी रामः', यस्तो वन्दछ । ८ अक्षरको अनुष्टुप् छन्दको पाउ'हुनु पर्नेमा ९ अक्षर हुन्छन्, छन्दोभङ्ग हुन्छ, पाउ पूर्ण हुँदैन । यसैकारणले यहाँ सकारको लोप भयो । यो उदाहरणको पूरा श्लोक यस्तो छ ।

**सैष दाशरथी रामः सैष भीमो महाबलः ।**
**सैष कर्णो महात्यागी सैष राजा युधिष्ठिरः ॥**

यहाँ चारै पाउमा "सोऽचि लोपे चेत्पादपूरणम्" यो सूत्र लागेको छ ।

**विसर्गसन्धिः समाप्त भयो**

(साथै पञ्चसन्धिप्रकरण पनि समाप्त भयो )

ꣻ

अच्सन्धि, प्रकृतिभाव, हल्सन्धि, विसर्गसन्धि, स्वादिसन्धि यी पाँच प्रकरणलाई पञ्च सन्धि भनिन्छ । यहाँ प्रकृतिभाव अच्सन्धि सँगै छ । विसर्गसन्धिसँगै स्वादिसन्धि छ । यहाँ अच्सन्धि, हल्सन्धि, विसर्गसन्धि तीन प्रकरण मात्र उल्लिखित भए पनि यहाँ पाँचै सन्धि छन् ।

---

## अथ षड्लिङ्गेषु अजन्तपुंलिङ्गाः

**११५.अर्थवदधातुरप्रत्ययः प्रातिपदिकम् १ । २ । ४५ ॥**

धातुं प्रत्ययं प्रत्ययान्तं च वर्जयित्वा अर्थवच्छब्दस्वरूपं प्रातिपदिकसंज्ञं स्यात् ।

---

**अब सुबन्तप्रकरण आरम्भ गरिन्छ ।**

[३२]**अर्थवदिति** - धातु, प्रत्यय र प्रत्ययान्ततदादिलाई छोडेर अर्थवान् शब्दस्वरूप प्रातिपदिकसंज्ञक होस् ।

यस सूत्रमा चार पद छन्- अर्थवद्, अधातुः, अप्रत्ययः, प्रातिपदिकम् । यहाँ प्रातिपदिकम्, यो विशेष्य हो । अर्थवद्, अधातुः अप्रत्ययः यी विशेषण हुन् । यी तीनमा पनि अधातुः अप्रत्ययः यी दुई अर्थवद् शब्दका विशेषण हुन् । अतः अधातुः, अप्रत्ययः, अर्थवत्, प्रातिपदिकम् यस्तो अन्वय छ । "प्रत्ययग्रहणे तदन्तस्यापि ग्रहणम्" यो परिभाषा लगाएर प्रत्यय र प्रत्ययान्त दुवै लिइएको छ ।

यो सूत्र प्रकृति प्रत्ययको अर्थविभाग नबुझिने रूढ शब्दहरूलाई र प्रकृति प्रत्ययको अर्थ बुझिने भएपनि प्रत्ययान्त नभएका वहुपटु, सर्वक, आदि शब्दलाई प्रातिपदिकसंज्ञा गर्ने सूत्र हो । शब्द अव्युत्पन्न, व्युत्पन्न दुवै हुन्छन् । त्यसमध्ये यौटै शब्द व्युत्पन्न अव्युत्पन्न दुवै पनि हुन्छ । जस्तै राम शब्द व्यक्तिविशेषलाई र मृगविशेषलाई बुझाउँदा अव्युत्पन्न हुन्छ भने भगवान् रामलाई बुझाउँदा व्युत्पन्न हुन्छ । रामशब्दको अव्युत्पन्न पक्षमा यस सूत्रले प्रातिपदिक संज्ञा हुन्छ । व्युत्पन्न पक्षमा राम शब्द रम् धातुदेखि घञ् प्रत्यय भएर भएको हुनाले "कृत्तद्धितसमासाश्च" यसले प्रातिपदिकसंज्ञा हुन्छ ।

यो सूत्रका यी तीनवटै विशेषणका आवश्यक प्रयोजन छन् । 'अर्थवद्' नभन्ने हो भने निरर्थक धन, वन आदि शब्दका अवयव वर्ण 'न्' आदिको प्रातिपदिक संज्ञा भएर औत्सर्गिक एकवचन आएर लोप होला र पद संज्ञा भएर नकारको लोप होला ।

'अधातुः' नभन्ने हो 'अहन्' आदिको प्रातिपदिक संज्ञा होला र नकारको लोप होला ।

'अप्रत्ययः' न भन्ने हो भने प्रत्यय, प्रत्ययान्त दुवैलाई प्रातिपदिक संज्ञा होला जस्तो-रामेपु,

---

३२ यस सूत्रका चार पदलाई लिएर प्रश्नोत्तर स्वरूपमा निर्माण गरिएको एक श्लोक छ–

**"बुधः कीदृग्वचो ब्रूते ? को रोगी ? कश्च नास्तिक ? ।**
**कीदृक्चन्द्रं न पश्यन्ति ? तत्सूत्रं पाणिनेर्वद ? ॥**

बुधः कीदृग्वचो ब्रूते ? यो प्रश्नको उत्तर 'अर्थवद्' हो । कोरोगी ? यो प्रश्नको उत्तर 'अधातुः' हो । कश्च नास्तिकः ? यो प्रश्नको उत्तर 'अप्रत्ययः' हो । कीदृक्चन्द्रं न पश्यन्ति ? यो प्रश्नको उत्तर 'प्रानिपदिकम्' हो । तत्सूत्रं पाणिनेर्वद ? यो प्रश्नको उत्तर "अर्थवदधातुरप्रत्ययःप्रातिपदिकम्" यो सूत्र हो ।

यसको अर्थ- प्र.- बुधः कीदृग्वचो ब्रूते ? (विद्वान् कस्तो वोली बोल्छ ?) उ.- अर्थवत् (सार्थक वोली बोल्छ ।) प्र.को रोगी ? (रोगी कुन हो ?) उ.- अधातुः (रस रक्त आदि धातु नभएको अर्थात् कम भएको ।) प्र.- कश्च नास्तिकः ? (नास्तिक कुन हो ?) उ.- अप्रत्ययः (ईश्वरको र परलोकको विश्वास नगर्ने ।) प्र.- कीदृक्चन्द्रं न पश्यन्ति ? (कस्तो चन्द्रमालाई देख्दैनन् ?) उ.- प्रातिपदिकम् (प्रतिपदाको चन्द्रमालाई ।) प्र.- तत्सूत्रं पाणिनेर्वद ? (त्यो पाणिनिको सूत्र भन !) उ.- (त्यो पाणिनिको सूत्र हो- "अर्थवदधातुरप्रत्ययः प्रातिपदिकम् ।")

**११६. कृत्तद्धितसमासाश्च १ । २ । ४६ ॥**

कृत्तद्धितान्तौ समासाश्च तथा स्युः ॥

**११७. स्वौजसमौट्छष्टाभ्याम्भिस्ङेभ्याम्भ्यस्ङसिभ्याम्भ्यस्ङसोसाम्ङ्योस्सुप् ४।१।२॥**

सु औ जस् इति प्रथमा । अम् औट् शस् इति द्वितीया । टा भ्याम् भिस् इति तृतीया । ङे भ्याम् भ्यस् इति चतुर्थी । ङसि भ्याम् भ्यस् इति पञ्चमी । ङस् ओस् आम् इति षष्ठी । ङि ओस् सुप् इति सप्तमी ।

**११८. ङ्याप्प्रातिपदिकात् ४ । १ । १ ॥**

**११९. प्रत्ययः ३ । १ । १ ॥**

**१२०. परश्च ३ । १ । २ ॥**

इत्यधिकृत्य । ङ्यन्तादावन्तात्प्रातिपदिकाच्च परे स्वादयः प्रत्ययाः स्युः ॥

---

करोषि, यहाँ सु र सि प्रत्यय छन् । यिनीहरूदेखि औत्सर्गिक एकवचन सु आउला र 'स्वमोर्नपुंसकात्'ले लुक् होला । सु, सि दुवै पद होलान् र 'सात्पदाद्योः' यस सूत्रले षत्व निषेध होला ।

'प्रत्ययग्रहणे तदन्त ग्रहणम्' यो परिभाषा लगाएर प्रत्ययान्त पनि भनिएको छ । प्रत्ययान्तलाई प्रातिपदिक संज्ञा भएमा 'रामेषु' 'करोषि'बाट पुनः विभक्ति आउला ।

**कृत्तद्धितेति-** कृदन्ततदादि, तद्धितान्ततदादि र समास पनि प्रातिपादिक संज्ञक होऊन् ।

**कृदन्त-** कर्तृ, हर्तृ, कारक, पाचक आदि शब्द, **तद्धितान्त-** औपगव, वैनतेय, आदित्य आदि शब्द **समास-** राजपुरूष, चित्रगु, रूपवद्भार्य आदि शब्द हुन् ।

**स्वौजसिति-** सु, औ, जस् आदि सात विभक्ति छन् । ती मध्ये,

सु, औ, जस् यी प्रथमाविभक्ति, अम्, औट्, शस्, यी द्वितीयाविभक्ति,
टा, भ्याम्, भिस्, यी तृतीयाविभक्ति, ङे, भ्याम्, भ्यस्, यी चतुर्थीविभक्ति,
ङसि, भ्याम्, भ्यस्, यी पञ्चमीविभक्ति, ङस्, ओस्, आम्, यी षष्ठीविभक्ति,
ङि, ओस्, सुप्, यी सप्तमीविभक्ति हुन् ।

स् को सु र सुप् को पकारसम्म सुप् यो प्रत्याहार हो । सुप् प्रत्याहार भित्र सातै विभक्ति आउँछन् ।

प्रत्येक विभक्तिमा तीन वचन छन् । सु एकवचन, औ द्विवचन, जस् बहुवचन । यस्तै प्रकारले द्वितीयादि विभक्तिमा पनि जान्नू । यसरी सात विभक्ति भित्र एक्काईस वचन हुन्छन् ।

ङ्याप्प्रातिपदिकात्, प्रत्ययः, परश्च, यी तीन सूत्रको अधिकार गरेर एकै ठाउँमा अर्थ गरिन्छ । अर्को सूत्रसँग मिलेर वाक्यार्थबोध गराउने सूत्रलाई अधिकार सूत्र भनिन्छ ।

**ङ्याबिति, प्रत्यय इति, परश्चेति च-** 'ङयाप्प्रातिपदिकात्' 'प्रत्ययः' 'परश्च' यी तीन अधिकार सूत्र हुन् ।

**इत्यधिकृत्येति-**यी तीनै सूत्रको "स्वौजसमौट्०" यो सूत्रसँग एकवाक्यता हुन्छ र निम्नलिखित अर्थ आउँछ ।

**ङ्यन्तादिति-**स्वादिहरू प्रत्ययसंज्ञक भएर ङ्यन्त, आवन्त र प्रातिपदिकदेखि पर होऊन् ।

"प्रातिपदिकग्रहणे लिङ्गविशिष्टस्यापि ग्रहणम्" यो परिभाषा लगाएर ङ्यन्त, आवन्त, स्वतः ग्रहण हुन्थे, "ङ्याप्प्रातिकात्" मा ङ्यन्त आवन्त भन्नु पर्ने थिएन । "न सामिवचने" यो

---

**१२१. सुपः १ । ४ । १०३ ॥**
सुपस्त्रीणि त्रीणि वचनान्येकश एकवचनद्विवचनबहुवचनसंज्ञानि स्युः ॥
**१२२. द्व्येकयोर्द्विवचनैकवचने १ । ४ २२ ॥**
द्वित्वैकत्वयोरेते स्तः ॥
**१२३. विरामोऽवसानम् १ । ४ । ११० ॥**
वर्णानामभावोऽवसानसंज्ञः स्यात् । रुत्वविसर्गौ ।रामः ॥

---

सूत्रबाट ज्ञापित हुने अत्यन्त स्वार्थिक कन् प्रत्ययले ङीप् र टाप्लाई बाधेर पहिले भयो भने लोहितिका, एतिका, आर्यिका यी रूप मात्र हुन्छन् । ङचन्त आबन्तदेखि कन् गरेमा लोहिनिका, एनिका, आर्यका यी रूप पनि हुन्छन् । ती रूप पनि सिद्ध होऊन् भनेर यहाँ ङ्याप् ग्रहण गरेको हो । यो विषय ङीप्, टाप् प्रत्ययको प्रकरण पर्यालोचन गरेपछि बुझिन्छ ।

**सुप इति-** सुप् (प्रत्याहार) का तीन तीन वचन क्रमैले एकवचन, द्विवचन र बहुवचन संज्ञक होऊन् ।

सातै विभक्तिका तीन तीन वचन क्रमशः एकवचन, द्विवचन र बहुवचन संज्ञक हुन्छन् अर्थात् प्रथमाविभक्तिमा 'सु' यो एकवचन, 'औ' यो द्विवचन, 'जस्' यो बहुवचन । यस्तै प्रकारले द्वितीयादि विभक्तिमा पनि एकवचन, द्विवचन र बहुवचन संज्ञा हुन्छ ।

**द्व्येकयोरिति-** द्वित्वसंख्याविशिष्टरूप अर्थ र एकत्वसङ्ख्याविशिष्टरूप अर्थ बुझिंदामा क्रमशः द्विवचन र एकवचन होऊन् ।

जस्तै एक रामलाई बुझाउँदा एकवचन, दुई रामलाई बुझाउँदा द्विवचन, धेरै रामलाई बुझाउँदा बहुवचन हुन्छ । यस्तै अरू शब्दमा पनि यही नियम हुन्छ ।

कहीं शब्दको निर्देशन गर्दा, "अपदं न प्रयुञ्जीत" यो सिद्धान्त अनुसार औत्सर्गिक प्रथमा विभक्तिको एकवर्चन मात्र हुन्छ ।

**विराम इति-** वर्णहरूको अभाव अवसानसंज्ञक होस् ।

**रुत्वेति-** रुत्व र विसर्ग भएपछि रामः यो सिद्ध भयो ।

**रामः** (राम) रामशब्द दुई प्रकारका छन्, एक व्युत्पन्न, एक अव्युत्पन्न, जसमा प्रकृति प्रत्ययको अर्थ विभाग बुझिन्छ त्यसलाई भन्छन् व्युत्पन्न । जसमा प्रकृति प्रत्ययको अर्थ विभाग बुझिन्न त्यसलाई भन्छन् अव्युत्पन्न । अव्युत्पन्न पक्षको व्यक्तिविशेष वा मृगविशेषलाई कहने रूढ राम शब्दलाई धातु प्रत्यय र प्रत्ययान्त तदादिदेखि भिन्न हुनाले "अर्थवदधातुरप्रत्ययः प्रातिपदिकम्" यो सूत्रले प्रातिपदिक संज्ञा भयो । अब व्युत्पन्न पक्षको राम शब्द कसरी बन्यो ? रम् धातु देखि अधिकरण अर्थमा 'रमन्ते योगिनः अस्मिन्' यो विग्रहमा "हलश्च"ले घञ् प्रत्यय भयो, अनुबन्ध लोप भयो, 'रम्+अ' भयो "अत उपधायाः"ले वृद्धि भयो, 'राम' भयो । राम यो कृदन्त हुनाले यसलाई "कृत्तद्धितसमासाश्च"ले प्रातिपदिकसंज्ञा भयो, अनि 'स्वौजसमौट्छस्' यो सूत्रसँग "ङ्याप्प्रातिपदिकात्" 'प्रत्ययः' 'परश्च' यी तीनै सूत्रको सम्मिलित अर्थमा स्वादिहरू प्रत्यय संज्ञक भएर ङ्यन्त आबन्त र प्रातिपदिकदेखि पर होऊन् भनेकोले यहाँ प्रातिपदिक 'राम' यसदेखि पर 'खले कपोतन्याय' लगाएर सात विभक्ति एक्काईस वचन जम्मै पायो । पाएपछि 'सुपः' यो सूत्रले प्रत्येक विभक्तिका तीन तीन वचनलाई एकवचन, द्विवचन र बहुवचन संज्ञा भयो, अर्थात् सुलाई एकवचन 'औ'लाई द्विवचन 'जस्'लाई वहुवचन संज्ञा, 'अम्'लाई एकवचन,

१२४. **सरूपाणामेकशेष एकविभक्तौ** १ । २ । ६४ ॥

एकविभक्तौ यानि सरूपाण्येव दृष्टानि तेषामेक एव शिष्यते ।

१२५. **प्रथमयोः पूर्वसवर्णः** ६ । १ । १०२ ॥

अकः प्रथमाद्वितीययोरचि पूर्वसर्वर्णदीर्घ एकादेशः स्यात् । इति प्राप्ते ।

१२६. **नादिचि** ६ । १ । १०४ ॥

आदिचि न पूर्वसवर्णदीर्घः । वृद्धिरेचि । रामौ ॥

---

औट्लाई द्विवचन शस्लाई बहुवचन, ङेलाई एकवचन, भ्याम्लाई द्विवचन, भ्यस्लाई बहुवचन, ङसिलाई एकवचन भ्याम्लाई द्विवचन, भ्यस्लाई बहुवचन, ङस्लाई एकवचन, ओस्लाई द्विवचन, आम्लाई बहुवचन, ङिलाई एकवचन, ओस्लाई द्विवचन सुप्लाई बहुवचन संज्ञा भयो । अनि "प्रातिपदिकार्थलिङ्गपरिमाणवचनमात्रे प्रथमा" यो सूत्र लगाएर प्रातिपदिकार्थ मात्र बुझिँदामा प्रथमाविभक्ति सु, औ, जस्, पाएमा "द्वचेकयोर्द्विकवचने" यो सूत्र लगाएर एकत्वसङ्ख्याविशिष्टरूप अर्थ बुझिँदामा एकवचन सु आयो, 'राम+सु' भयो सुका उकारको "उपदेशेऽजनुनासिक इत्" ले इत्संज्ञा भयो "तस्य लोपः" ले लोप भयो 'रामस्' भयो "ससजुषो रुः" ले सकारका स्थानमा रु आदेश अनुबन्धलोप भयो, 'रामर्' भयो ।रामर् यहाँ रामर्का रेफदेखि पर वर्णको अभाव हुनाले "विरामोऽवसानम्" यस सूत्रले अवसानसंज्ञा भएपछि "खरवसानयोर्विसर्जनीयः" यस सूत्रले विसर्ग भयो 'रामः' सिद्ध भयो ।

**सरूपाणामिति** समान विभक्तिमा जो शब्दस्वरूप समानरूप भएका नै देखिन्छन् तिनीहरूमध्ये यौटा मात्रै शेष रहन्छ, अर्को लुप्त हुन्छ ।

**प्रथमयोरिति-** अकदेखि[३३] प्रथमा र द्वितीया विभक्तिसम्वन्धी अच् पर भएमा पूर्व र परका स्थानमा पूर्वसवर्णदीर्घ एकादेश होस् । यो सूत्रले पूर्वसवर्ण दीर्घ पाएमा ।

**नादिचि-** अवर्णदेखि इच् पर भएमा पूर्वसवर्ण दीर्घ नहोस् ।

**वृद्धिरिति-** यो सूत्रले पूर्वसवर्ण दीर्घ निषेध भएपछि 'वृद्धिरेचि'ले वृद्धि भयो ।रामौ ।

**रामौ** (दुई राम) राम शब्द दुई छन् एक दशरथापत्य रामलाई बुझाउने राम शब्द एक जमदग्नि ऋषिका छोरा परशुरामलाई बुझाउने राम शब्द यी दुई रामलाई कहँदा "सकृदुच्चरितः शब्दः सकृदेवार्थं गमयति" एकपटक उच्चारण गरिएको शब्दले यौटै अर्थ बुझाउँछ भन्ने सिद्धान्त अनुसार 'रामः,रामः' यस्तो प्रयोग पाएमा "सरूपाणामेक शेष एकविभक्तौ" यो सूत्र लाएर दशरथापत्य रामलाई कहने राम शब्द र जामदग्न्य रामलाई कहने राम शब्द समानविभक्तिमा समानरूप भएका देखिने हुनाले यौटा राम शब्द शेष रह्यो, यौटा राम शब्दको लोप भयो । अब शेष रहेका राम शब्ददेखि "प्रातिपदिकार्थलिङ्गपरिमाणवचनमात्रे प्रथमा" यो सूत्रले प्रातिपदिकार्थमात्र बुझिँदामा प्रथमा विभक्ति सु औ जस् सबै पाएमा "यः शिष्यते स लुप्यमानार्थाभिधायी" जो शेष रहन्छ त्यसले लोप भएकाको पनि अर्थ बुझाउँछ भनेको हुनाले शेष रहेका राम शब्दले लोप भएका

---

३३ "प्रथमा च प्रथमा च प्रथमे तयोः प्रथमयोः" सबै विभक्तिको अपेक्षाले प्रथमाविभक्ति पहिला छ भने, तृतीयादि विभक्तिको अपेक्षाले द्वितीया विभक्ति पहिलो छ । अतः 'प्रथमयोः' यो शब्दले पहिलेका दुई विभक्ति लिइन्छन् ।

१२७. **बहुषु बहुवचनम्** १ । ४ । २१ ॥
बहुत्वविवक्षायां बहुवचनं स्यात् ।

१२८. **चुटू** १ । ३ । ७ ॥
प्रत्ययाद्यौ चुटू इतौ स्तः ॥

१२९. **विभक्तिश्च** १ । ४ । १०४ ॥
सुप्तिङौ विभक्तिसंज्ञौ स्तः ॥

१३०. **न विभक्तौ तुस्माः** १ । ३ । ४ ॥
विभक्तिस्थास्तवर्गसमा नेतः । इति सस्य नेत्वम् । रामा : ॥

---

राम शब्दको पनि अर्थ बुझाएकोले दुई रामलाई कहँदा द्वित्वसंख्याविशिष्टरूप अर्थ बुझिएकोले "द्वयेकयोर्द्विवचनैक०" लाएर प्रथमा विभक्तिको द्विवचन औ आयो, 'राम+औ' भयो 'राम+औ' यहाँ "वृद्धिरेचि"लाई बाधेर प्रथमयो पूर्वसवर्णः" यस सूत्रले अक्-रामको अकारदेखि प्रथमासम्बन्धी अच्- औ पर भएकोले पूर्वसवर्णदीर्घ पायो पाएमा "नादिचि" ले अवर्णदेखि इच् पर भएमा पूर्वसवर्णदीर्घ नहोस् भनेकोले पूर्वसवर्णदीर्घको निषेध भयो । 'बाधकाभावे पुनरुत्सर्गशास्त्रस्य प्रवृत्तिः' 'बाधक शास्त्रको अभावमा फेरि सामान्य शास्त्रको प्रवृत्ति हुन्छ,' यो परिभाषा लगाएर पुनः "वृद्धिरेचि" लाग्यो 'राम+औ' यहाँ वृद्धि हुँदा, 'रामौ' सिद्ध भयो ।

**बहुष्विति**- बहुत्वसङ्ख्याविशिष्टरूप अर्थको विवक्षामा बहुवचन होस् । यहाँ बहुत्वसंख्या भनेको तीन संख्यादेखि माथि चार, पाँच आदि सबै संख्या हुन् ।

**चुटू इति**- प्रत्ययका आदिमा रहेका चवर्ग र टवर्ग इत्संज्ञक होऊन् ।

**विभक्तिश्चेति** सुप् र तिङ् विभक्तिसंज्ञक होउन् ।

**न विभक्ताविति**- विभक्तिमा रहेका तवर्ग, दन्त्य सकार, मकार इत्संज्ञक नहोऊन् ।

**इति सस्येति**- यो सूत्र लगाएर दन्त्य सकारको इत्संज्ञा हुँदैन ।

**रामाः** (रामहरू)**रामशब्द** तीन प्रकारका छन् । एक दशरथका छोरा रामचन्द्रलाई कहने, एक जमदग्नि ऋषिका छोरा पर्शुरामलाई कहने, एक वसुदेवका छोरा बलरामलाई कहने यी तीन रामलाई कहँदामा "सकृदुच्चरितः शब्दः सकृदेवार्थं गमयति" यो न्याय अनुसार रामः,रामः,रामः, यस्तो प्रयोग पायो पाएमा "सरूपाणमेकशेष एकविभक्तौ" यो सूत्र लगाएर दशरथापत्य राम, जामदग्न्य राम र बलराम तीनैलाई कहने राम शब्द समान विभक्तिमा समानरूप भएका देखिएकोले तीमध्ये एउटाको मात्र शेष रह्यो अरूको लोप भयो । "प्रातिपदिकार्थलिङ्गपरिमाणवचनमात्रे प्रथमा" यस सूत्रले प्रातिपदिकार्थमात्र बुझिँदामा 'राम'शब्ददेखि प्रथमा विभक्ति सु, औ, जस्, पाएमा "यः शिष्यते०" इत्यादि परिभाषाले शेष रहेका राम शब्दले लोप भएका दुवै रामको पनि अर्थ बुझाएकोले तीन रामलाई कहँदा बहुत्वसङ्ख्याविशिष्टरूप अर्थ बुझियो र "बहुषु बहुवचनम्" लगाएर बहुवचन जस् आयो, 'राम+जस्' भयो प्रत्ययका आदिमा रहेको च वर्ग हुनाले जस्का जकारको "चुटू" ले इत्संज्ञा, "तस्य लोपः"ले लोप भयो, 'राम+अस्' भयो, अस् लाई "विभक्तिश्च" यस सूत्रले विभक्ति संज्ञा भयो, अस् का सकारको "हलन्त्यम्" ले इत्संज्ञा पाएकोमा "न विभक्तौ तुस्माः" ले यो विभक्तिमा रहेको सकार हुनाले इत्संज्ञाको निषेध भयो । 'राम+अस्' यहाँ "अकः सवर्णे दीर्घः"लाई बाधेर "अतो गुणे"ले पररूप पायो त्यसलाई बाधेर "प्रथमयोः पूर्वसवर्णः"ले अक्-रामको अकारदेखि

१३१. **एकवचनं सम्बुद्धिः** २ । ३ । ४९ ॥
सम्वोधने प्रथमाया एकवचनं सम्बुद्धिसंज्ञं स्यात् ॥
१३२. **यस्मात्प्रत्ययविधिस्तदादि प्रत्ययेऽङ्गम्** १ । ४ । १३ ॥
यः प्रत्ययो यस्मात् क्रियते तदादिशब्दस्वरूपं तस्मिन्नङ्गं स्यात् ॥
१३३. **एङ्ह्रस्वात्सम्बुद्धेः** ६ । १ । ६९ ॥
एङन्तादध्रस्वान्ताञ्चाङ्गाद्धल्लुप्यते सम्वुद्धेश्चेत् । हे राम !, हे रामौ !, हे रामाः !

---

प्रथमा विभक्ति सम्वन्धी अच्-अस्को अकार पर भएकोले पूर्व र परका दुवै अकारका स्थानमा पूर्वसवर्णदीर्घ एकादेश आ भयो 'राम्+आस्' भयो मकार आकारमा लाग्दा 'रामास्' भयो । सकारको रुत्व भयो 'रामार्' भयो, 'रामार्' देखि पर वर्णको अभाव हुनाले "विरामोऽवसानम्"ले अवसान संज्ञा भएपछि रेफको "खरवसानयोः०"ले विसर्ग भयो 'रामाः' सिद्ध भयो ।

**एकवचनमिति-** सम्वोधन अर्थ बुझिँदामा प्रथमाको एकवचन संवुद्धिसंज्ञक होस् ।

**यस्मादिति-** जो प्रत्यय जसदेखि विधान गरिन्छ, त्यो आदिमा हुने शव्दस्वरूप त्यो प्रत्यय पर भएमा अङ्गसंज्ञक होस् ।

यो सूत्र 'भवामि' बनाउँदा पूर्णरूपमा घट्दछ । जो प्रत्यय जसदेखि गरिन्छ भन्दा, मि प्रत्यय भू देखि गरिन्छ त्यो भू आदिमा हुने शब्दस्वरूप पछि भव वनेको छ, त्यो मि प्रत्यय पर भएमा भवलाई अङ्ग संज्ञा हुन्छ, 'भव+ मि' यहाँ "अतो दीर्घो यञि" ले अकारान्त अङ्ग भवका अकारका स्थानमा दीर्घ भएर 'भवामि' बन्दछ । यहाँ 'राम' यसको सु पर भएमा व्यपदेशिवद्भावले अङ्ग संज्ञा हुन्छ ।

**एङ्ह्रस्वादिति-** एङ्अन्तमा हुने अङ्गदेखि र ह्रस्व अन्त्यमा हुने अङ्गदेखि पर रहेको हल्को लोप हुन्छ, संबुद्धिको अवयव छ भने ।

**हे राम-**राम शब्ददेखि "संबोधने च" भन्ने सूत्रले संबोधन अर्थ बुझिँदामा प्रथमा विभक्ति सु, औ, जस् पाएमा "द्वयेकयोर्द्विवचनैकवचने" यो सूत्रले एकत्वसङ्ख्याविशिष्टरूप अर्थ बुझिदामा एकवच सु आयो, 'राम+सु' भयो । 'सु' यो संबोधन अर्थमा विधान गरिएको प्रथमाको एकवचन हुनाले "एकवचनं संबुद्धिः" यस सूत्रले संबुद्धिसंज्ञा भयो । उकारको अनुवन्धलोप भयो 'राम+स्' भयो 'स' यसलाई पर राखेर राम यसलाई "यस्मात्प्रत्यविधिस्तदादि प्रत्ययेऽङ्गम्"ले व्यपदेशिवद्भावले अङ्गसंज्ञा भयो अनि स् यो ह्रस्व अन्तमा हुने अङ्ग रामदेखि पर रहेको संबुद्धि अर्थात् सुको अवयव हल् हुनाले "एङ्ह्रस्वात्संबुद्धेः"ले लोप भयो, हे शब्दको पूर्व प्रयोग भयो, 'हे राम !,' यो सिद्ध भयो ।

**हे रामौ-** राम शब्ददेखि सम्बोधन अर्थ वुझिँदामा "संवोधने च"ले प्रथमा विभक्ति सु औ जस् पाएमा "द्वयेकयोः०"ले द्वित्वसंख्याविशिष्टरूप अर्थ बुझिँदामा द्विवचन 'औ' आयो, 'राम+औ' भयो, यहाँ पूर्ववत् सबै कार्य भयो, 'रामौ', हे शब्दको पूर्व प्रयोग भयो 'हे रामौ' सिद्ध भयो ।

**हे रामाः-** राम शब्ददेखि संबोधन अर्थमा वहुत्वसंख्याविशिष्टरूप अर्थ बुझिँदामा प्रथमा विभक्तिको बहुवचन जस् आयो, 'राम+जस्' भयो । 'राम+जस्' यहाँ पूर्ववत् सबै कार्य भयो 'रामाः', हे शब्दको पूर्व प्रयोग भयो 'हे रामाः' सिद्ध भयो ।

**अमीति-** अकदेखि अम्सम्बन्धी अच् पर भएमा पूर्व र परका स्थानमा पूर्वरूप एकादेश होस् ।

**रामम्-** कर्म अर्थ बुझिदामा रामशब्ददेखि "कर्मणि द्वितीया" ले द्वितीया विभक्ति अम्

१३४. **अमि पूर्वः** ६ । १ । १०७ ॥
अकोऽम्यचि पूर्वरूपमेकादेशः ।रामम् ।रामौ ॥
१३५. **लशक्वतद्धिते** १ । ३ । ८ ॥
तद्धितवर्जप्रत्ययाद्या लशकवर्गा इतः स्युः ॥
१३६. **तस्माच्छसो नः पुंसि** ६ । १ । १०३ ॥
पूर्वसवर्णदीर्घात्परो यः शसः सस्तस्य नः स्यात्पुंसि ॥
१३७. **अट्कुप्वाङ्नुम्व्यवायेऽपि** ८ । ४ । २ ॥
अट् कवर्गः पवर्ग आङ् नुम् एतैर्व्यस्तैर्यथासंभवं मिलितैश्च व्यवधानेऽपि रषाभ्यां परस्य नस्य णः समानपदे । इति प्राप्ते ॥
१३८. **पदान्तस्य** ८ । ४ । ३७ ॥
नस्य णो न । रामान् ॥

---

औट् शस् पाएमा एकत्वसंख्याविशिष्टरूप अर्थ बुझिँदा मा "द्वचेकयोर्द्विवचनैकवचने" यो सूत्र लाएर एकवचन अम् आयो, 'राम+अम्' भयो यहाँ "अकः सवर्णे दीर्घः"ले दीर्घ पाएकोमा बाधेर "अतो गुणे"ले पररूप पायो, त्यसलाई बाधेर "प्रथमयो०ः"ले पूर्वसवर्णदीर्घ पायो, त्यसलाई बाधेर "अमि पूर्वः" ले अक्-रामको अकारदेखि अम्सम्बन्धी अच्-अम्को अकार पर हुनाले पूर्वरूप भयो 'राम्+अम्' भयो, वर्णमेलन भयो, 'रामम्' सिद्ध भयो ।

**रामौ-** कर्म अर्थ बुझिदाँमा राम शब्ददेखि 'कर्मणि द्वितीया"ले द्वितीया विभक्ति सबै पायो द्वित्वसङख्याविशिष्टरूप अर्थ बुझिँदामा द्वितीयाको द्विवचन औट् आयो, टकारको इत्संज्ञा र लोप भयो, 'राम+औ' भयो । 'राम+औ' यहाँ "वृद्धिरेचि"ले वृद्धि पायो, त्यसलाई बाधेर "प्रथमयोः०"ले पूर्वसवर्णदीर्घ पायो । त्यसको "नादिचि"ले निषेध भयो "बाधकाभावे" लगाएर "वृद्धिरेचि" ले वृद्धि भयो 'रामौ' सिद्ध भयो ।

**लशक्विति-** तद्धितभिन्न प्रत्ययका आदिमा रहेको लकार, तालव्य शकार, कवर्ग, इत्संज्ञक होऊन्।

**तस्मादिति-** पूर्वसवर्णदीर्घदेखि पर रहेको शस्सम्बन्धी जो दन्त्य सकार त्यसका स्थानमा नकार आदेश होस् पुंलिङ्गमा ।

**अट् कुप्वाङिति-** अट् प्रत्याहार, कवर्ग, पवर्ग, आङ् उपसर्ग, नुम् आगम, यिनीहरूले पृथक् पृथक् र जतिको संभव हुन्छ त्यति मिलेर व्यवधान भएमा पनि रेफ र मूर्धन्य षकारदेखि पर रहेका नकारका स्थानमा णकार आदेश होस्, निमित्त र नैमित्तिक अखण्डपदमा भएमा ।

**इति प्राप्त इति-** यो सूत्रले णत्व पाएमा-

**पदान्तस्येति-** पदका अन्तमा रहेका नकारका स्थानमा णकार नहोस् ।

**रामान्-** कर्म अर्थ बुझिँदामा राम शब्ददेखि "कर्मणि द्वितीया" द्वितीया विभक्ति सबै पाएकोमा बहुत्वसंख्याविशिष्टरूप अर्थ बुझिँदामा बहुवचन शस् आयो, "शस्" का शकारको "लशक्वतद्धिते" ले इत्संज्ञा र "तस्य लोपः" ले लोप भयो, 'राम+अस्' भयो अस्का सकारको इत्संज्ञा पाएको "न विभक्तौ तुस्माः" ले निषेध भयो 'राम+अस्' यहाँ "अकः सवर्णे०" लाई बाधेर "अतोगुणे" ले पररूप पायो पररूपलाई बाधेर "प्रथमयोः पूर्वसवर्णः" ले पूर्वसवर्ण दीर्घ भयो 'रामास्' भयो, रामास् यहाँ पूर्वसवर्णदीर्घ रामाको आकारदेखि पर रहेको सकार हुनाले रामास्का सकारका स्थानमा "तस्माच्छसो नः पुंसि"ले नकार आदेश भयो 'रामान्' भयो । रामान्को नकार अट्

---

**१३९. टाङसिङसामिनात्स्याः ७ । १ । १२ ॥**
अदन्ताट्टादीनामिनादयः स्युः ॥ णत्वम् । रामेण ॥
**१४०. सुपि च ७ । ३ । १०२ ॥**
यञादौ सुपि अतोऽङ्गस्य दीर्घः । रामाभ्याम् ॥
**१४१. अतो भिस ऐस् ७ । १ । ९ ॥**
अनेकाल्शित्सर्वस्य । रामैः ॥

---

प्रत्याहार र पवर्गले व्यवधान भए पनि रेफदेखि पर रहेकोले "अट्कुप्वाङ्नुम्व्यवायेऽपि"ले णत्व पाएकोमा पदका अन्त्यमा रहेको नकार हुनाले "पदान्तस्य"ले णत्व निषेध भयो, 'रामान्' सिद्ध भयो।

**टाङसिङसामिति-** अकारान्त अङ्गदेखि पर रहेका टा, ङसि, ङस्, यी तीनका स्थानमा क्रमैले इन, आत्, स्य, आदेश होऊन्।

**णत्वमिति-** 'रामेन'का नकारका स्थानमा णकार हुन्छ।

**रामेण-** कर्ता अथवा करण अर्थ बुझिँदामा रामशब्ददेखि "कर्तृकरणयोस्तृतीया" यस सूत्रले तृतीया विभक्ति टा भ्याम् भिस् सबै पायो, एकत्वसङ्ख्याविशिष्टरूप अर्थ बुझिँदामा "द्वयेकयोर्द्विवचनैकवचने" लगाएर एकवचन 'टा' आयो, टकारको "चुटू" ले इत्संज्ञा "तस्य लोपः" ले लोप भएपछि 'राम+आ' भयो आलाई पर राखेर रामलाई "यस्मात्प्रत्ययविधिः०" ले अङ्ग संज्ञा भयो अकारान्त अङ्ग रामदेखि पर रहेकोले टाको आकारका स्थानमा इन आदेश भयो 'राम+इन' भयो "आद्गुणः" ले गुण भयो 'रामेन' भयो 'रामेन' यहाँ रेफदेखि पर रहेको नकार अट् प्रत्याहार र पवर्गले व्यवधान भएको हुँदा "अट्कुप्वाङ्०" ले णत्व भयो, 'रामेण' सिद्ध भयो।

**सुपि चेति-** यञ् प्रत्याहार आदिमा हुने सुप् पर भएमा ह्रस्व अकार अन्तमा हुने अङ्गका स्थानमा दीर्घ होस्।

**रामाभ्याम्-** कर्ता अथवा करण अर्थ बुझिंदामा राम शब्ददेखि "कर्तृकरणयोस्तृतीया" यो सूत्रले तृतीया विभक्ति पाएमा द्वित्वसङ्ख्याविशिष्टरूप अर्थ बुझिँदामा तृतीयाको द्विवचन भ्याम् आयो, 'राम+भ्याम्' भयो, "न विभक्तौ तुस्माः" ले भ्याम्का मकारको इत्संज्ञा निषेध भयो, "यस्मात्प्रत्यय०" ले अङ्ग संज्ञा भएपछि यञ्प्रत्याहार आदिमा हुने सुप्-भ्याम् पर भएकोले ह्रस्व अकारान्त अङ्ग 'राम'का स्थानमा "सुपि च"ले दीर्घ गर्दा "अलोऽन्त्यस्य" लगाएर रामका अकारका स्थानमा दीर्घ आ, ई, ऊ, ॠ, ए, ओ, ऐ, औ, सबै पाएकोमा आन्तरतम्याद् आकार आदेश भयो 'रामाभ्याम्' सिद्ध भयो।

**अतो भिस इति-** अकारान्त अङ्गदेखि पर रहेका भिस्का स्थानमा ऐस् आदेश होस्।

**रामैः-** कर्ता अथवा करण अर्थ बुझिदामा "कर्तृकरणयोस्तृतीया" यो सूत्रले टा भ्याम्, भिस्, पाएमा बहुत्वसंख्याविशिष्टरूप अर्थ बुझिँदा "बहुषु बहुवचनम्" ले बहुवचन भिस् आयो, 'राम+भिस्' भयो, भिस्का सकारको "हलन्त्यम्"ले इत्संज्ञा पाएकोमा, "न विभक्तौ तुस्माः" ले निषेध भयो, अतः लोप भएन। "यस्मात्प्रत्ययविधि०"ले अङ्ग संज्ञा भएपछि अकारान्त अङ्ग रामदेखि पर रहेको भिस्का स्थानमा "अतो भिस एस्" ले ऐस्आदेश हुदाँ "अलोऽन्त्यस्य" लगाएर अन्त्य अल्का स्थानमा पाएकोमा अनेकाल् हुनाले "अनेकाल् शित्सर्वस्य" लगाएर भिस् सबैका स्थानमा ऐस् भयो 'राम+ऐस्' भयो, "वृद्धिरेचि"ले वृद्धि, रुत्व, विसर्ग भयो, 'रामैः' सिद्ध भयो।

**ङेरिति-** ह्रस्वअकार अन्तमा हुने अङ्गदेखि पर रहेका ङेका स्थानमा य आदेश होस्।

**स्थानिवदिति-** आदेश, स्थानिवृत्ति धर्मवान् होस्, स्थानी सम्बन्धी जो अल् तद्वृत्ति अल्मात्रवृत्ति

**१४२. ङेर्यः ७ । १ । १३ ॥**

अतोऽङ्गात्परस्य ङेर्यादेशः ॥

**१४३. स्थानिवदादेशोऽनल्विधौ १ । १ । ५६ ॥**

आदेशः स्थानिवत्स्यान्न तु स्थान्यलाश्रयविधौ। इति स्थानिवत्वात् सुपि चेति दीर्घः । रामाय ।रामाभ्याम् ॥

---

जो धर्म तद्घटित-धर्मनिमित्तक कार्य गर्दामा त स्थानिवद्भाव नहोस् ।

जसका स्थानमा केही विधान गरिन्छ त्यो स्थानी हो । जसलाई विधान गरिन्छ त्यो आदेश हो । जस्तै यहाँ 'ङे' का स्थानमा 'य'को विधान गर्दा 'ङे' स्थानी र 'य' आदेश छ । अर्थात् ङे लाई हटाएर ङेका स्थानमा 'य'रहन्छ । 'ङे'मा सुप्त्व धर्म छ त्यो स्थानिवृत्ति (स्थानीमा रहने) धर्म हो । आदेश स्थानिवृत्ति धर्मवान् होस् भनेकोले 'ङे'मा रहेको सुप्त्व धर्म 'य'मा पनि आएपछि य पनि सुप् कहलाउँछ ।

अल् विधिमा त नहोस् यसको अर्थ माथि स्पष्ट गरिएको छ । अझ् स्पष्ट यसरी हुन्छ । अल्भित्र सब अक्षर पर्छन् स्थानीसम्बन्धी जो अल् अर्थात् जो एक अक्षर, तद्वृत्ति- त्यसमा रहने, अल्मात्रवृत्ति एक अक्षरमा मात्र रहने जो धर्म, तद्घटितधर्म त्यसले गराएको आरोपित धर्म तन्निमित्तक भनेको त्यसलाई निमित्त मानेर गरिने कार्य गर्दामा स्थानिवद्भाव नहोस् ।

यसको उदाहरण 'सुद्यौः' यहाँ "औत्"ले वकारका स्थानमा औकार भएपछि यण् भएर 'सुद्यौ'स् भएको छ । यहाँ वकारका स्थानमा औकार भएकोले वकारमा रहेको हल्त्व धर्म औकारमा आएर औकार हल् मान्ने हो भने "हल्ङ्याब्भ्यो दीर्घात्०" ले सकारको लोप पाउँछ । किनभने स्थानीसम्बन्धी अल् सुदिव्को वकार एक अक्षर छ, त्यसमा रहने अल्मात्रवृत्ति= एक अक्षरमा मात्र रहने धर्म हो हल्त्व धर्म, तद्घटित धर्म हो औकारमा स्थानिवद्भाव गरेर ल्याइएको आरोपित धर्म हल्त्व, तन्निमित्तकार्य हो "हल्ङ्याब्भ्यो दीर्घात्०"ले सकारको लोप गर्नु, त्यो कार्य गर्दामा स्थानिवद्भाव नहोस् भनेकोले त्यहाँ स्थानिवद्भाव हुँदैन र त्यहाँ सकारको लोप हुन्न । यहाँ 'ङे'मा रहेको सुप्त्व धर्म अल्मात्रवृत्ति अर्थात् एक अक्षरमा मात्र रहने धर्म हैन र स्थानिवद्भाव निषेध हुन्न ।

**इतीति-** यो सूत्र लगाएर स्थानिवद्भाव भएको हुनाले "सुपि च" ले दीर्घ भएर 'रामाय' बन्दछ ।

**रामाय-** "चतुर्थी सम्प्रदाने" यो सूत्रले सम्प्रदान अर्थ बुझिंदामा रामशब्ददेखि चतुर्थी विभक्ति ङे, भ्याम्, भ्यस् पाएकोमा एकत्वसङ्ख्याविशिष्टरूप अर्थ बुझिंदामा एकवचन ङे आयो, ङकारको "लशक्वतद्धिते" ले इत्संज्ञा लोप भयो 'राम+ए' भयो,रामलाई अङ्गसंज्ञा भयो, अकारान्त अङ्गदेखि पर रहेको हुनाले ङेका स्थानमा "ङेर्यः"ले य आदेश भयो, 'राम+य' भयो, यहाँ अल्विधि गर्नु छैन र "स्थानिवदादेशोऽनल्विधौ" लाएर स्थानिवद्भाव हुँदा, स्थानी ङेमा रहेको सुप्त्वधर्म 'य' मा पनि आयो, र 'य' पनि सुप् कहलायो र "सुपि च"ले दीर्घ गर्दा "अलोऽन्त्यस्य" लाएर रामका अकारको स्थानमा आकार भयो, 'रामाय' सिद्ध भयो ।

**रामाभ्याम्-** सम्प्रदान अर्थ बुझिंदामा रामशब्ददेखि "चतुर्थी संप्रदाने"ले ङे, भ्याम्, भ्यस्, पाएकोमा द्वित्वसंख्याविशिष्टरूप अर्थ बुझिँदामा चतुर्थीको द्विवचन भ्याम् आयो, 'राम+भ्याम्' भयो, अङ्ग संज्ञा भयो,रामका अकारका स्थानमा "सुपि च" ले पूर्ववत् दीर्घ भएर आकार भयो 'रामाभ्याम्' ।

**बहुवचन इति-** झल् आदिमा हुने बहुवचन सुप् पर भएमा ह्रस्व अकारान्त अङ्गका स्थानमा एकार आदेश होस् ।

**१४४. बहुवचने झल्येत् ७ । ३ । १०३ ॥**

झलादौ बहुवचने सुप्यतोऽङ्गस्यैकारः । रामेभ्यः । सुपि किम् ? पचध्वम् ॥

**१४५. वाऽवसाने ८ । ४ । ५६ ॥**

अवसाने झलां चरो वा । रामात्,रामाद् । रामाभ्याम् । रामेभ्यः । रामस्य ॥

---

**रामेभ्यः**- सम्प्रदान अर्थ बुझिँदामा राम शब्ददेखि चतुर्थी विभक्ति ङे, भ्याम् भ्यस् सबै पाएकोमा बहुत्वसङ्ख्याविशिष्टरूप अर्थ बुझिँदामा बहुवचन भ्यस् आयो, 'राम+भ्यस्' भयो, सकारको "न विभक्तौ०" ले इत्संज्ञा निषेध भयो, अङ्गसंज्ञा भयो, 'राम+भ्यस्' यहाँ "सुपि च" लाई बाधेर, झलादि बहुवचन सुप् पर भएकोले ह्रस्व अकारान्त अङ्ग 'राम'का स्थानमा "बहुवचने झल्येत्" ले एकार आदेश पायो "अलोऽन्त्यस्य" लाएर 'राम'का अकारका स्थानमा एकार भयो । 'रामेभ्यस्' भयो रुत्व, विसर्ग भयो, "रामेभ्यः" ।

**सुपि किमिति**- सुपि किम् "बहुवचने झल्येत्" भन्ने सूत्रमा सुपि किन भन्नु ? नभन्ने हो भने सूत्रको अर्थ "झल् आदिमा हुने बहुवचन पर भएमा अकारान्त अङ्गका स्थानमा दीर्घ होस्" यस्तै होला । यस्तो अर्थ भए पछि दोषजाला कहाँ ? पचध्वम् यहाँ, यहीं पनि पचका अकारका स्थानमा एकार भैजाला । सो नहोस् भनेर हामीले सुपि भन्यौं, अब 'पच+ध्वम्' यहाँ 'पच'का आकारदेखि पर ध्वम् यो सुप् छैन, तिङ् छ र एत्व भएन 'पचध्वम्' यस्तै रह्यो ।

**वेति**- अवसान पर भएमा झल्का स्थानमा चर् आदेश विकल्पले होऊन् ।

**रामात्,रामाद्**- अपादान अर्थ बुझिँदामा राम शब्ददेखि "अपादाने पञ्चमी"ले पञ्चमी विभक्ति ङसि, भ्याम्, भ्यस्, पाएमा एकत्वसङ्ख्याविशिष्टरूप अर्थ बुझिँदामा एकवचन ङसि आयो । ङसिका ङकारको र इकारको इत्संज्ञा र लोप भयो, 'राम+अस्' भयो । अङ्गसंज्ञा भयो, अकारान्त अङ्ग रामदेखि पर रहेको हुनाले ङसिको अस्का स्थानमा "टाङसिङसामिनात्स्याः" ले आत् आदेश गर्दा "अलोऽन्त्स्य"लाई बाधेर "अनेकाल् शित्सर्वस्य"ले अस् सबैका स्थानमा आत् भयो । 'राम+आत्' भयो, 'राम+आत्' यहाँ, "अकः सवर्णे दीर्घः" ले दीर्घ भयो,रामात् "झलां जशोऽन्ते" ले जश्त्व भयो, 'रामाद्' भयो, अवसान पर भएको हुनाले झल्-'रामाद्'को दकारका स्थानमा "वाऽवसाने"ले वैकल्पिक चर्त्व भयो 'रामात्' भयो, चर्त्व नभएको पक्षमा 'रामाद्' भयो, यसरी दुई रूप सिद्ध भए ।

**रामाभ्याम्** "अपादाने पञ्चमी" यस सूत्रले अपादान अर्थ बुझिँदामा राम शब्ददेखि पञ्चमी विभक्ति ङसि, भ्याम्, भ्यस्, पाएमा द्वित्वसंख्याविशिष्टरूप अर्थ बुझिँदामा द्विवचन भ्याम् आयो, 'राम+भ्याम्' भयो, पूर्ववत् "सुपि च"ले दीर्घ भयो 'रामाभ्याम्' सिद्ध भयो ।

**रामेभ्यः** अपादान अर्थ बुझिँदामा "आपादाने पञ्चमी" यो सूत्रले राम शब्ददेखि पञ्चमी विभक्ति ङसि, भ्याम्, भ्यस् पाएमा बहुत्वसंख्याविशिष्टरूप अर्थ बुझिँदामा बहुवचन भ्यस् आयो, 'राम+भ्यस्' भयो पूर्ववत् "न विभक्तौ तुस्माः"ले सकारको इत्संज्ञा निषेध भयो । "सुपि च" लाई बाधेर "बहुवचने झल्येत्" ले एत्व भयो सकारको रुत्व विसर्ग भयो, 'रामेभ्यः' सिद्ध भयो ।

**रामस्य**- शेष अर्थ अर्थात् कारकप्रातिपदिकार्थव्यतिरिक्त संबन्धमात्र बुझिँदामा "षष्ठी शेषे" यस सूत्रले राम शब्ददेखि षष्ठी विभक्ति ङस्, ओस्, आम् पाएकोमा एकत्वसंख्याविशिष्टरूप अर्थ बुझिँदामा एकवचन् 'ङस्' आयो, ङकारको अनुबन्ध लोप भयो 'राम+अस्' भयो, "टाङसिङसामिनात्स्याः" यस सूत्रले ङस्को अस्का स्थानमा 'स्य' आदेश भयो, 'रामस्य' सिद्ध भयो ।

---

**१४६. ओसि च ७ । ३ । १०४ ॥**

अतोऽङ्गस्यैकारः । रामयोः ॥

**१४७. ह्रस्वनद्यापो नुट् ७ । १ । ५४ ॥**

ह्रस्वान्तान्नद्यन्तादाबन्ताच्चाङ्गात्परस्यामो नुडागमः ॥

**१४८. नामि ६ । ४ । ३ ॥**

अजन्ताङ्गस्य दीर्घः ।रामाणाम् । रामे । रामयोः । सुपि-एत्वे कृते ।

**१४९. आदेशप्रत्यययोः ८ । ३ । ५९ ॥**

इण्कुभ्यां परस्यापदान्तस्यादेशः प्रत्ययावयवश्च यः सस्तस्य मूर्धन्यादेशः । ईषद्विवृतस्य सस्य तादृश एव षः ।

---

**ओसिचेति**- ओस् पर भएमा ह्रस्व अकार अन्तमा हुने अङ्गका स्थानमा एकार होस् ।

**रामयोः** शेष अर्थमा 'षष्ठी शेषे' ले राम शब्ददेखि षष्ठी विभक्ति ङस्, ओस्, आम् पाएमा द्वित्वसंख्याविशिष्टरूप अर्थमा द्विवचन ओस् आयो, 'राम+ओस्' भयो अङ्गसंज्ञा भएपछि "ओसि च" ले रामका स्थानमा एकार पाएकोमा "अलोऽन्त्यस्य" लाएर अकारका स्थानमा एकार भयो 'रामे+ओस्' भयो, अयादेश भयो, 'रामयोस्' भयो, रुत्व, विसर्ग भयो 'रामयोः' सिद्ध भयो ।

**ह्रस्वेति**- हृस्व अन्तमा हुने अङ्ग नदीसंज्ञक शब्द अन्तमा हुने अङ्ग र आप् अन्तमा हुने अङ्गदेखि पर रहेका आम्को नुट् आगम होस् ।

**नामीति**- अजन्त अङ्गका स्थानमा दीर्घ होस् नाम् पर भएमा ।

**रामाणाम्**-राम शब्ददेखि शेष अर्थमा "षष्ठी शेषे" भन्ने सूत्रले षष्ठी विभक्ति ङस् ओस्, आम् पाएकोमा "बहुषु बहुवचनम्" लगाएर बहुत्वसंख्याविशिष्टरूप अर्थ बुझिँदामा बहुवचन आम् आयो, 'राम+आम्' भयो ।राम यो हृस्व अन्तमा हुने अङ्ग छ र "ह्रस्वनद्यापो नुट्"ले नुट्आगम भयो उकार र टकारको अनुबन्धलोप भयो नकार बाँकी रह्यो "आद्यन्तौ टकितौ" लगाएर टित्वाद् आम्को आदिपट्टि न् भयो, 'राम+नाम्' भयो "नामि" ले "अलोऽन्त्यस्य" लाएर रामका अकारका स्थानमा दीर्घ हुँदा आन्तरतम्याद् आकार भयो 'रामानाम्' भयो । नाम्को नकारको "अट्कुप्वाङ्नुम्व्यवायेऽपि" ले णत्व भयो, 'रामाणाम्' ।

**रामे**- अधिकरण अर्थमा "सप्तम्यधिकरणे च" ले राम शब्ददेखि सप्तमीविभक्ति ङि, ओस्, सुप्, पाएमा "द्व्येकयोः०" यो सूत्रले एकत्वसङ्ख्याविशिष्टरूप अर्थ बुझिँदा एकवचन ङि आयो, ङिका ङकारको "लशक्वतद्धिते" ले इत्संज्ञा भयो "तस्य लोपः" ले लोप भयो । 'राम+इ' भयो "आद्गुणः" ले गुण भयो 'रामे' सिद्ध भयो ।

**रामयोः**- अधिकरण अर्थ बुझिँदामा 'सप्तम्यधिकरणे च' यो सूत्रले राम शब्ददेखि सप्तमी विभक्ति ङि, ओस्, सुप् पाएमा द्वित्वसंख्याविशिष्टरूप अर्थ बुझिँदा "द्व्येकयोः०" लाएर द्विवचन ओस् आयो,राम ओस् भयो, पूर्ववत् ओस् पर भएमा रामका अकार स्थानमा "ओसि च" ले एकार भयो, 'रामे+ओस्' भयो,रामेको एकारका स्थानमा अय् आदेश भयो, सकारको रुत्व विसर्ग भयो, 'रामयोः' सिद्ध भयो ।

**आदेशेति**- इण् प्रत्याहार कवर्गदेखि पर रहेको पदान्तमा नरहेको आदेश र प्रत्ययको अवयवरूप जो दन्त्य सकार छ त्यसका स्थानमा मूर्धस्थानी आदेश होस् ।

**ईषद्विवृतस्येति**- ईषद्विवृतप्रयत्न भएका दन्त्यसकारका स्थानमा ईषद्विवृत प्रयत्न भएको

रामेषु । एवं कृष्णादयोऽप्यदन्ताः ॥

---

मूर्धन्य षकार हुन्छ ।

**रामेषु**- अधिकरण अर्थमा "सप्तम्यधिकरणे च" यो सूत्रले राम शब्ददेखि सप्तमी विभक्ति ङि, ओस्, सुप् पाएमा "बहुषु बहुवचनम्" लगाएर बहुत्वसङ्ख्याविशिष्टरूप अर्थ बुझिँदामा बहुवचन सुप् आयो, पकारको "हलन्त्यम्" ले इत्संज्ञा "तस्य लोपः"ले लोप भयो 'राम+सु' भयो सुलाई पर राखेर रामलाई अङ्गसंज्ञा भयो "बहुवचने झल्येत्" ले 'अलोऽन्त्यस्य' लाएर रामका अकारका स्थानमा एकार भयो, 'रामेसु' भयो । यहाँ सुको सकार इण् प्रत्याहार-'रामे'को एकारदेखि पररहेको पदान्तमा नरहेको प्रत्ययको अवयव दन्त्य सकार छ र त्यसका स्थानमा "आदेशप्रत्यययोः" ले मूर्धन्य ऋ,टु,र,ष सबै आदेश पायो "स्थानेऽन्तरतमः" लगाएर आन्तरतम्याद् ईषद्विवृत प्रयत्नवाला दन्त्य सकारका स्थानमा ईषद्विवृतप्रयत्न भएको मूर्धन्य षकार भयो 'रामेषु' सिद्ध भयो ।

**एवमिति**- यसैगरी कृष्ण आदि अकारान्तशब्द पनि जान्नू । अरू सबै ठाउँमा राम शब्द र कृष्ण शब्दमा फरक छैन, णत्व गर्ने ठाउँमा फरक छ । जस्तै 'रामेण' हुने ठाउँमा 'कृष्णेन' हुन्छ । 'रामाणाम्' हुने ठाउँमा 'कृष्णानाम्' हुन्छ । अर्थात् कृष्ण शब्दमा 'णत्व'को निमित्त षकारदेखि पर णकारले व्यवधान भएको हुनाले णत्व हुँदैन । यहाँ "चुटुतुलशसव्यवाये न णत्वम्" यो फलितार्थ नियम संझनुपर्छ ।

रामशब्दका सातै विभक्तिका एकवचनका रूप तलको पद्यमा सङ्गृहीत छन् ।

रामो राजमणिः सदा विजयते रामं रमेशं भजे
रामेणाभिहता निशाचरचमू रामाय तस्मै नमः
रामान्नास्ति परायणं परतरं रामस्य दासोऽस्म्यहम्
रामे चित्तलयः सदा भवतु मे भो राम मामुद्धर ॥

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमा | रामः | रामौ | रामाः |
| द्वितीया | रामम् | रामौ | रामान् |
| तृतीया | रामेण | रामाभ्याम् | रामैः |
| चतुर्थी | रामाय | रामाभ्याम् | रामेभ्यः |
| पञ्चमी | रामात्/द् | रामाभ्याम् | रामेभ्यः |
| षष्ठी | रामस्य | रामयोः | रामाणाम् |
| सप्तमी | रामे | रामयोः | रामेषु |
| सम्बोधन | हेराम ! | हेरामौ ! | हेरामाः ! |

रामशब्दमा प्रथमाको द्विवचन र द्वितीयाका द्विवचनमा समान रूप छन् । तृतीया, चतुर्थी र पञ्चमीका द्विवचनमा पनि समान रूप छन् । यस्तै षष्ठी र सप्तमीका द्विवचनमा पनि समानरूप छन् । चतुर्थी र पञ्चमीका बहुवचनमा पनि समान रूप छन् । यति स्थलमा सबै शब्दमा सबै लिङ्गमा समान रूप हुन्छन्, यो स्मरण गर्नु पर्दछ ।

अब जुन अकारान्त शब्दहरूमा राम शब्दको भन्दा भिन्नता छ । ती शब्दहरूको उल्लेख गरिन्छ । त्यसमा सर्वादिगणका शब्द मुख्य छन् । सर्वादिगणका अकारान्त शब्दहरूमा जस्, ङे, ङसि, आम् र ङि यी पाँच ठाउँमा फरक पर्छ । शेष रूप राम शब्दकै समान हुन्छन् । अतः सर्वादिशब्दमा यी पाँच स्थलका रूपसिद्धि प्रक्रिया तल दिइन्छ ।

---

**१५०. सर्वादीनि सर्वनामानि १ । १ । २७ ॥**

सर्व विश्व उभ उभय डतर डतम अन्य अन्यतर इतर त्वत् त्व नेम सम सिम । **ग.सू** (पूर्वपरावरदक्षिणोत्तरापराधराणि व्यवस्थायामसंज्ञायाम्) **ग.सू** (स्वमज्ञातिधनाख्यायाम्) **ग.सू** (अन्तरं बहिर्योगोपसंव्यानयोः) त्यद् तद् यद् एतद् इदम् अदस् एक द्वि युष्मद् अस्मद् भवतु किम् ॥

**१५१. जसः शी ७ । १ । १७ ॥**

अदन्तात्सर्वनाम्नो जसः शी स्यात् । अनेकाल्त्वात्सर्वादेशः । सर्वे ॥

---

**सर्वादीनीति-** सर्वादिगण पठित शब्दस्वरूप र सर्वाद्यन्त शब्दस्वरूप सर्वनामसञ्ज्ञक होऊन् । सर्वस्य नाम= सर्वनाम, यो विग्रह हुँदा सर्वनाम सार्थक संज्ञा हो । अतः सर्वादि गणमा पढिएका शब्द सबैको नाममा प्रयोग गर्न सकिने हुन्छन् । यसैले सर्वनाम संज्ञा अन्वर्थ छ । टि., घु., भ जस्तो निरर्थक खालि रूपसिद्धि प्रक्रियाका निमित्त गरिएको संज्ञा सर्वनाम संज्ञा हैन । "सञ्ज्ञोपसर्जनीभूतास्तु न सर्वादयः" सर्वशब्द कुनै व्यक्तिको नाम छ भने त्यसलाई सर्वनाम संज्ञा हुँदैन । 'सर्वो नाम कश्चित्तस्मै सर्वाय' यस्तो हुन्छ । समास गरेर गौण भएमा पनि सर्वनामसंज्ञा हुँदैन 'सर्वमतिक्रान्तः, अतिसर्वस्तस्मै अतिसर्वाय' यस्तो हुन्छ ।

**सर्वादिगणको परिगणन-** सर्व, विश्व, उभ, उभय, डतर, डतम, अन्य, अन्यतर, इतर, त्वत्, त्व, नेम, सम, सिम, पूर्व आदि सात शब्द, स्व., अन्तर, त्यद्, तद्, यद् एतद्, इदम्, अदस्, एक, द्वि, युष्मद्, अस्मद्, भवत्, किम्, यी ३५ शब्द सर्वादिगण भित्र पर्दछन् ।

सर्व (सबै), विश्व (सबै), उभ (दुई), उभय (दुई समुदाय), अन्य (अर्को), अन्यतर (दुईमध्ये एक), इतर (अर्को), त्वत्/त्व (अन्य), नेम (आधा), सम/सिम (सबै) । डतर, डतम यी दुई प्रत्यय हुन् । अतः कतर कतम आदि डतर डतम प्रत्ययान्त शब्दको ग्रहण हुन्छ । यो कुरा मूलबाट नै स्पष्ट हुनेछ ।

**(ग.सू.) पूर्वपरेति-** संज्ञा भिन्न व्यवस्था अर्थ बुझिँदामा, पूर्व, पर, अवर, दक्षिण, उत्तर, अपर, अधर, शब्द सर्वादिगणमा पढिन्छन् । पूर्व (पूर्वदिशा, पहिलो), पर (पछिल्लो, अर्को), अवर (पछिल्लो) दक्षिण (दक्षिण दिशा), उत्तर (उत्तर दिशा), अपर (पश्चिम दिशा, अर्को), अधर (तल तिरको) ।

**(ग.सू.) स्वमिति-** दाजुभाइ र धनभिन्न अर्थ वुझिँदामा स्वशब्द सर्वदिगणमा पढिन्छ ।

**(ग.सू.) अन्तरमिति-** बाह्य अर्थ र परिधानीय अर्थ बुझिँदामा अन्तरशब्द सर्वादिगणमा पढिन्छ । स्व (आफू, आफ्नो), अन्तर (बाहिरको, पैह्रन योग्य) ।

**सर्वादिगणान्तर्गत त्यदादिगण-** त्यद् (त्यो), तद् (त्यो), यद् (जो), एतद् (यो), इदम् (यो), अदस् (यो), एक (एक), द्वि (दुई), युष्मद् (तिमी), अस्मद् (म), । भवतु=भवत् (तपाईं), किम् (कुन), सर्वशब्ददेखि लिएर किम् शब्द पर्यन्तका शब्द सर्वादि हुन् ।

सर्वशब्द सर्वादिगणमा पहिलो छ र अकारान्त छ अकारान्त सर्वादिशब्दको जस्, ङे, ङसि, आम्, ङि, यी पाँच ठाउँमा मात्र रूप फरक हुन्छन् । अरू स्थलमा राम शब्दका जस्तै रूप हुन्छन् । सु, औमा रामशब्दमा जस्तै सर्वः, सर्वौ, यी रूप हुन्छन् ।

**जश इति-** ह्रस्व अकारान्त सर्वनामसंज्ञक शब्ददेखि पर रहेका जस्का स्थानमा शी आदेश होस् ।

**अनेकाल्त्वादिति-**अनेकाल् हुनाले पूरै जस्का स्थानमा शी आदेश हुन्छ ।

**सर्वे-** सर्वशब्दलाई "सर्वादीनि सर्वनामानि" ले सर्वनाम संज्ञा भयो, अनि त्यसदेखि प्रथमाको बहुवचन 'जस्' आयो, 'सर्व+जस्' भयो, जकारको 'चुटू' ले इत्संज्ञा भयो, "तस्य लोपः" ले लोप भयो, 'सर्व+अस्' भयो सर्व अस् यहाँ ह्रस्व अकारान्त सर्वनामसञ्ज्ञक शब्द सर्वदेखि पर

**१५२. सर्वनाम्नः स्मै ७ । १ । १४ ॥**

अतः सर्वनाम्नो ङेः स्मै । सर्वस्मै ॥

**१५३. ङसिङ्योः स्मात्स्मिनौ ७ । १ । १५ ॥**

अतः सर्वनाम्न एतयोरेतौ स्तः । सर्वस्मात् ॥

**१५४. आमि सर्वनाम्नः सुट् ७ । १ । ५२ ॥**

अवर्णान्तात्परस्य सर्वनाम्नो विहितस्यामः सुडागमः । एत्वषत्वे ।

---

रहेकोले अस्का स्थानमा "जसश्शी"ले शी आदेश गर्दा "अलोऽन्त्यस्य"ले, सकारका स्थानमा पाएकोमा "अनेकाल्शित् सर्वस्य" लगाएर अनेकाल हुनाले पूरै अस्का स्थानमा शी भयो 'सर्व+शी' भयो, "स्थानिवदादेशोऽनल्विधौ" ले स्थानिवद्भाव भएर अस्मा रहेको प्रत्ययत्व धर्म शीमा आयो,र शीका शकारको "लशक्वतद्धिते" ले इत्संज्ञा "तस्य लोपः" ले लोप भयो, 'सर्व+ई' भयो । "प्रथमयोः०" ले पाएको पूर्वसवर्ण दीर्घको "नादिचि" ले निषेध भयो 'आद्गुणः'ले गुण भयो 'सर्वे' सिद्ध भयो । सर्वम् सर्वौ, सर्वान् । सर्वेण, सर्वाभ्याम्, सर्वैः। यी रूप रामशब्दमा जस्तै हुन्छन् ।

**सर्वनाम्न इति-** अकारान्त सर्वनामसंज्ञक शब्ददेखि पर रहेका ङे का स्थानमा स्मै आदेश होस् ।

**सर्वस्मै-** सर्वशब्ददेखि चतुर्थीको एकवचन ङे आयो,, अनुबन्ध लोप भयो, 'सर्व+ए' भयो अकारान्त सर्वनामसंज्ञकशब्द 'सर्व'देखि पर रहेको हुनाले 'ङे' का एका स्थानमा "सर्वनाम्नःस्मै"ले 'स्मै'आदेश भयो, सर्वस्मै सिद्ध भयो । द्विवचन र बहुवचनमा 'सर्वाभ्याम्', 'सर्वेभ्यः',रामशब्दमा जस्तै रूप हुन्छन् ।

**ङसिङ्योरिति-** अकारान्त सर्वनामसंज्ञक शब्ददेखि पर रहेका ङसि र ङिका स्थानमा स्मात् र स्मिन् आदेश क्रमैले होऊन् ।

**सर्वस्मात्-द् -** सर्वशब्ददेखि पञ्चमी विभक्तिको एकवचन ङसि आयो, ङकार र सिका इकारको इत्संज्ञा र लोप भयो, 'सर्व+अस्' भयो, ङसिङ्योः स्मात्स्मिनौ" यस सूत्रले ङसिका अस्का स्थानमा स्मात्आदेश गर्दा "अलोऽन्त्यस्य"लाई बाधेर "अनेकालशित्सर्वस्य" ले सम्पूर्ण अस्का स्थानमा भयो, "झलां जशोऽन्ते" ले स्मात्का तकारको जश्त्व भयो 'सर्वस्माद्', दकारका स्थानमा 'वाऽवसाने' ले चर्त्व भयो 'सर्वस्मात्', चर्त्व नभएको पक्षमा 'सर्वस्माद्' यी दुवै रूप सिद्ध भए । पञ्चमीको द्विवचन र बहुवचनमा रामवत् 'सर्वाभ्याम्', 'सर्वेभ्यः', यी दुई रूप हुन्छन् । षष्ठीको एकवचन र द्विवचनमा पनि रामशब्दमा जस्तै 'सर्वस्य', 'सर्वयोः' यी दुई रूप हुन्छन् ।

**आमीति-** [३४] अवर्णान्त अङ्गदेखि पर रहेका सर्वनामसंज्ञक शब्ददेखि विधान गरिएका आम्को सुट् आगम होस् ।

**एत्वषत्वे-इति-** सुट् आगम भएपछि "बहुवचने झल्येत्"ले एत्व र "आदेशप्रत्यययोः"ले षत्व हुन्छ ।

---

३४ त्यद् तद् आदिशब्दमा "त्यदादीनामः"ले अत्वर "अतो गुणे"ले पररूप भएपछि मात्र अवर्णान्त हुने हुँदा अवर्णान्त सर्वनामशब्ददेखि विधान गरिएका भन्न मिल्दैन । किनकि आम् विधान गर्ने समयमा त्यदादिशब्द अवर्णान्त हुँदैनन् । अवर्णान्त सर्वनामसंज्ञक शब्ददेखि पर रहेका यस्तो अर्थ गर्दा 'वर्णाश्रमेतराणाम्' यहाँ दोष जान्छ । किनकि इतरशब्द अवर्णान्त पनि छ सर्वनामसंज्ञक पनि हो । 'वर्णाश्रमेतर+आम्' यहाँ आम् अवर्णान्त सर्वनामसंज्ञक इतर शब्ददेखि पर भए पनि सर्वनामसंज्ञक इतर शब्ददेखि विधान गरिएको छैन । वर्णाश्रमेतर शब्ददेखि विधान गरिएको छ 'वर्णश्रमेतर'शब्दको "द्वन्द्वे च"ले सर्वनामसंज्ञा निषेध हुन्छ । यसै कारणले "आमि सर्वनाम्नः सुट्" को अर्थ (अवर्णान्तात्परस्य सर्वनाम्नो विहितस्यामः सुडागमः) 'अवर्णान्तदेखि पर रहेका सर्वनामसंज्ञक शब्ददेखि विधान गरिएका आम्को सुट्आगम होस्' यस्तो गरिएको हो । त्यद् तद् आदि शब्दमा पनि 'आम्' को विधान सर्वनामसंज्ञक शब्ददेखि गरिएको छ । पछि सुट् गर्ने समयमा अवर्णान्तदेखि पर रहेको हुन्छ ।

सर्वेषाम् । सर्वस्मिन् । शेषं रामवत् । एवं विश्वादयोऽप्यदन्ताः ॥ उभशब्दो नित्यं द्विवचनान्तः ॥ उभौ २ । उभाभ्याम् ३ । उभयोः २ । तस्येह पाठोऽकजर्थः ।

---

**सर्वेषाम्-** सर्वशब्ददेखि सप्तमीको बहुवचन आम् आयो, 'सर्व+आम्' भयो अङ्ग संज्ञा भयो यहाँ "ह्रस्वनद्यापो०"ले नुट् पनि पायो साथै 'आम्' यो अवर्णान्त अङ्ग-'सर्व' यसदेखि पर छ, सर्वनामसंज्ञक शब्ददेखि विधान गरिएको पनि हो र आम्‌को "आमि सर्वनाम्नः सुट्"ले सुट् पनि पायो "सर्वेभ्यो ब्राह्मणेभ्यो दधि दीयतां तक्रं कौण्डिन्याय" यो न्याय लगाएर नुट्‌लाई बाधेर सुट् भयो, उट्‌को इत्संज्ञा, लोप भयो, स् बाँकी रह्यो । टित्त्वाद् "आद्यन्तौ टकितौ" लाएर 'स्' यो आम्‌को आदिपट्टि मित्रवत् मिलेर रह्यो, 'सर्व+साम्' भयो । "यदागमस्तद्गुणीभूतस्तद्ग्रहणेन गृह्यते" 'जसको आगम हो त्यसको गुणले युक्त हुन्छ, त्यसको ग्रहणमा ग्रहण गरिन्छ' । यो परिभाषा लगाएर आम्‌का ग्रहणमा सुट्‌को स् को पनि ग्रहण भयो । आम्‌मा रहेको सुप्त्व धर्म पनि आयो,र झल् आदिमा हुने बहुवचन सुप् साम् पर भएको हुनाले "बहुवचने झल्येत्" ले "सर्व" का अकारका स्थानमा एकार भयो, 'सर्वे+साम्' भयो । सर्वेको एकार इण् छ त्यसदेखि पर रहेको साम् को दन्त्य सकार प्रत्ययको अवयव छ र त्यसको "आदेशप्रत्यययोः" ले षत्व भयो 'सर्वेषाम्' सिद्ध भयो ।

**सर्वस्मिन्-** सर्व शब्ददेखि सप्तमीको एकवचन ङि आयो, ङकारको इत्संज्ञा लोप भयो 'सर्व+इ' भयो, ङिका इकारका स्थानमा "ङसिङ्योः स्मात्स्मिनौ"ले स्मिन् आदेश भयो, 'सर्वस्मिन्' सिद्ध भयो । द्विवचन बहुवचनमा-'सर्वयोः, सर्वेषु',राम शब्दमा जस्तै रूप हुन्छन् ।

**शेषमिति-** यहाँ जस् ङे, ङसि, आम्,र ङि, पाँच स्थलमा फरक हुने रूपहरू दर्शाएर अरू बाँकी राम शब्द जस्तै हुन्छन् भन्ने मूलको आशय हो ।

| | | | |
|---|---|---|---|
| प्र. | सर्वः | सर्वौ | सर्वे । |
| द्वि. | सर्वम् | सर्वौ | सर्वान् । |
| तृ. | सर्वेण | सर्वाभ्याम् | सर्वैः । |
| च. | सर्वस्मै | सर्वाभ्याम् | सर्वेभ्यः । |
| प. | सर्वस्मात्/द् | सर्वाभ्याम् | सर्वेभ्यः । |
| ष. | सर्वस्य | सर्वयोः | सर्वेषाम् । |
| स. | सर्वस्मिन् | सर्वयोः | सर्वेषु । |
| सं. | हे सर्व ! | हे सर्वौ ! | हे सर्वे ! |

**एवमिति-** यस्तै प्रकारले विश्व आदि अकारान्त शब्दका रूप (जो सर्वादिगणमा पढिएका छन्) पनि जान्नू ।

**उभशब्द इति-** उभ शब्द सधैं द्विवचनान्त छ । एकवचन र द्विवचनमा प्रयोग हुँदैन, त्यसैले प्रथमाको द्विवचन और औट्‌मा उभौ, उभौ, तृतीया, चतुर्थी र पञ्चमीको द्विवचमा उभाभ्याम्, उभ्याभ्याम्, उभ्याभ्याम्, षष्ठी र सप्तमीको द्विवचनमा उभयोः, उभयोः, यी रूप हुन्छन् ।

**तस्येहेति-** सर्वादिगणमा पढिएका शब्दहरूको जस्, ङे, ङसि, आम् र ङि मा विशेष कार्य हुन्छन् । एकवचन र बहुवचनमा उभ शब्दको प्रयोग नहुने भएपछि उभशब्द सर्वादिगणमा किन पढेको त ? यस प्रश्नको उत्तरमा उभ शब्द सर्वादिगणमा पढेको अकच् प्रत्ययको निमित्त हो । "अव्ययसर्वनाम्नामकच् प्राक्टेः" यस सूत्रले सर्वनामसंज्ञक भएको हुनाले उभशब्दको अकच् प्रत्यय भएर उभक शब्द बन्दछ ।

उभयशब्दस्य द्विवचनं नास्ति । उभयः । उभये । उभयम् । उभयान् । उभयेन । उभयैः । उभयस्मै । उभयेभ्यः । उभयस्मात् । उभयेभ्यः । उभयस्य । उभयेषाम् । उभयस्मिन् । उभयेषु ॥ डतरडतमौ प्रत्ययौ, प्रत्ययग्रहणे तदन्तग्रहणमिति तदन्ता ग्राह्याः ॥ नेम इत्यर्धे । समः सर्वपर्यायस्तुल्यपर्यायस्तु न, यथासंख्यमनुदेशः समानामिति ज्ञापकात् ॥

**१५५. पूर्वपरावरदक्षिणोत्तरापराधराणि व्यवस्थायामसंज्ञायाम् १ । १ । ३४ ॥**

एतेषां व्यवस्थायामसंज्ञायां च सर्वनामसंज्ञा गणसूत्रात्सर्वत्र या प्राप्ता सा जसि वा स्यात् । पूर्वे, पूर्वाः ।

---

**उभयशब्दस्येति-** उभयशब्दको द्विवचन छैन, त्यसैले उभयशब्दका रूप तल लेखिएबमोजिम हुन्छन् ।

| | |
|---|---|
| प्र. उभयः, उभये । | द्वि. उभयम्, उभयान् । |
| तृ. उभयेन, उभयैः । | च. उभयस्मै, उभयेभ्यः । |
| प. उभयस्मात्/द्, उभयेभ्यः । | ष. उभयस्य, उभयेषाम् । |
| स. उभयस्मिन्, उभयेषु । | सं हे उभय, हे उभये । |

**डतरडतमाविति** [३५] डतर र डतम प्रत्यय हुन् । "प्रत्ययग्रहणे तदन्तग्रहणम्" 'प्रत्ययको ग्रहणमा प्रत्ययान्तको ग्रहण हुन्छ', यो परिभाषा लगाएर डतर-डतम-प्रत्ययान्त शब्द ग्रहण गर्नुपर्छ । डतर डतम प्रत्यय अन्तमा हुने शब्द निम्नलिखित छन् ।

कतर, कतम, यतर, यतम, ततर, ततम, एकतर, एकतम ।

**नेम इति-** आधालाई कहने नेम शब्द सर्वादिगणमा पढिन्छ ।

**समेति-** सर्वशब्दको पर्यायवाचक सम शब्द सर्वादिगणमा पढिन्छ, तुल्य शब्दको पर्यायवाचक सम शब्द सर्वादिगणमा पढिदैन, "यथासङ्ख्यमनुदेशः समानाम्" यस्तो निर्देश हुनाले । तुल्यपर्यायवाचक सम शब्द सर्वादिगणमा पढिने भए- "यथासङ्ख्यमनुदेशः समानाम्" यहाँ 'समानाम्'को ठाउँमा 'समेषाम्' हुने थियो, अर्थात् "आमि सर्वनाम्नः सुट्" ले नुट्लाई बाधेर सुट् हुन्थ्यो ।

पूर्वादि शब्दमा ङे र आम्लाई छोडेर जस् ङसि ङि यी तीन स्थलमा क्रमैले शी, स्मात्, स्मिन् आदेश विकल्पले हुन्छन् । यो सर्वशब्दको भन्दा भिन्नता छ अब ती सूत्रहरू प्रस्तुत गरिन्छन् ।

**पूर्वपरेति-** पूर्व, पर, अवर, दक्षिण, उत्तर, अपर, अधर यी शब्दको संज्ञाभिन्न व्यवस्था अर्थ बुझिँदामा गणसूत्रमा पाठ पढ्नाले सर्वत्र प्राप्त भएको जो सर्वनामसंज्ञा छ त्यो जस्का विषयमा विकल्पले होस् ।

सर्वादिगणपाठ भित्रको गणसूत्र र यो सूत्र ठीक उस्तै छन्, तर अर्थ फरक छ । माथिको गणसूत्रले यी पूर्वादिशब्दको सर्वत्र सर्वनामसंज्ञा पाउँछ, त्यही सर्वनामसंज्ञा यो सूत्रले जस्का विषयमा विकल्पले गर्दछ । त्यस्तै "स्वमज्ञातिधनाख्यायाम्"र "अन्तरं बहिर्योगोपसंव्यानयोः" यी दुई सूत्र पनि ठीक उस्तै छन् । यी दुई सूत्रले पनि स्व शब्द,र अन्तर शब्दको सर्वत्र प्राप्त भएको सर्वनाम संज्ञा जस्का विषयमा विकल्पले गर्दछन् ।

**पूर्वे/पूर्वाः** पूर्व शब्दको जस्को विषयमा "पूर्वपरावर०" यो गणसूत्रले नित्य सर्वनामसंज्ञा पाएकोमा प्रस्तुत सूत्र "पूर्वपरावर०" १।१।३४ ले विकल्पले भयो, जस् आयो, अनुबन्धलोप भयो

---

३५ "कियत्तदोर्निर्धारणे द्वयोरेकस्य डतरच्" ५।३।९२ "वा बहूनां जातिपरिप्रश्ने डतमच् ५।३।९३ "एकाच्च प्राचाम्" ५।३।९४ यी तीन सूत्रले किं, यद् तद्, एक, शब्ददेखि डतर, डतम प्रत्यय हुन्छन् ।

असंज्ञायां किम् ? उत्तराः कुरवः । स्वाभिधेयापेक्षावधिनियमो व्यवस्था । व्यवस्थायां किम् ? दक्षिणा गाथकाः, कुशला इत्यर्थः ॥

**१५६. स्वमज्ञातिधनाख्यायाम् १ । १ । ३५ ॥**

ज्ञातिधनान्यवाचिनः स्वशब्दस्य प्राप्ता संज्ञा जसि वा ।

---

'पूर्व+अस्' भयो, "जशः शी"ले अस्‌का स्थानमा 'शी' भयो, अनुबन्धलोप भयो, 'पूर्व+ई' भयो । यहाँ पूर्वसवर्णदीर्घलाई "नादिचि"ले निषेध गरेपछि "आद्‌गुणः"ले गुण भयो, 'पूर्वे' सिद्ध भयो । सर्वनाम संज्ञा नभएको पक्षमा शी आदेश भएन 'पूर्व+अस्' यहाँ "प्रथमयोः पूर्वसवर्णः"ले पूर्वसवर्णदीर्घ भयो, रुत्व विसर्ग भयो 'पूर्वाः' सिद्ध भयो । पूर्वः, पूर्वौ, पूर्वे-पूर्वाः, यी प्रथमाका रूप भए । पर अवर आदि शब्दका पनि एवं प्रकारका रूप हुन्छन् । जस्तै– परः, परौ, परे/पराः । अवरः, अवरौ, अवरे/अवराः, इत्यादि ।

**असंज्ञायां किमिति**– असंज्ञायां किम् "पूर्वपरावरदक्षिणोत्तर०" यस सूत्रमा असंज्ञायाम् किन भन्नु ? नभनेमा सूत्रार्थ के होला त ? पूर्व पर अवर दक्षिण उत्तर अपर अधर शब्दको गणसूत्रमा पाठ पढ्नाले सर्वत्र प्राप्त भएको संज्ञा जस्‌का विषयमा विकल्पले होस् व्यवस्था अर्थ बुझिँदामा यो होला । यो अर्थ भए दोष जाला कहाँ ? 'उत्तर+अस् कुरवः' यहाँ । यहाँ पनि उत्तर शब्दको वैकल्पिक सर्वनामसंज्ञा होला र जस्‌का स्थानमा शी भएर 'उत्तरे कुरवः' यस्तो अनिष्ट रूपसिद्ध होला । सो नहोस् भनेर हामीले "असंज्ञायाम्" यसो भन्यौ यसो भनेपछि संज्ञाभिन्न व्यवस्था अर्थ बुझिँदामा भन्ने अर्थ भयो, यस्तो अर्थ भएपछि यहाँ उत्तर शब्द कुरुदेशको संज्ञावाचक भएकोले सर्वनामसंज्ञा भएन र जस्‌का स्थानमा शी भएन । पूर्वसवर्णदीर्घ, रुत्व, विसर्ग भयो, 'उत्तराः कुरवः' सिद्ध भयो । उत्तराः कुरवः[३६] (उत्तरदिशाको कुरुदेश)

**स्वाभिधेयेति**– स्व भनेको पूर्वादिशब्द, त्यसको अभिधेय भनेको वाच्यार्थ, त्यसले अपेक्षा गरिने अवधिको नियमलाई व्यवस्था भनिन्छ । पूर्वादिशब्दको वाच्यार्थ पूर्व, पश्चिम, उत्तर आदि भयो । त्यसले अपेक्षा गरिने अवधि भनेको कहाँदेखि पूर्व कहाँदेखि पश्चिम अथवा कसको अपेक्षाले पहिले कसको अपेक्षाले पछाडिभन्दा यहाँदेखि भनेर राखिने अवधिको नियम नै व्यवस्था हो । त्यो अवधिको नियम नभएमा व्यवस्था अर्थ बुझिँदैन ।

**व्यवस्थायां किमिति**– व्यवस्थायां किम् "पूर्वपरावर०" यस सूत्रमा व्यवस्थायाम् यो किन भन्नु ? नभन्ने हो भने सूत्रको अर्थ 'उक्त पूर्वादिशब्दको गणसूत्रमा पाठ पढ्नाले सर्वत्र प्राप्त भएको सर्वनाम संज्ञा जसका विषयमा संज्ञाभिन्न अर्थमा विकल्पले होस्' यस्तो होला । यस्तो अर्थ भएपछि दोषजाला कहाँ ? 'दक्षिण+जस् गाथकाः' यहाँ, यहीँ पनि सर्वनामसंज्ञा विकल्पले होला र जस्‌का स्थानमा शी आदेश होला । सो नहोस् भनेर "व्यवस्थायाम्" भनियो, व्यवस्थायाम् भनेपछि यहाँ व्यवस्था अर्थ बुझिँदैन, कुशल अर्थ बुझिन्छ र सर्वनामसंज्ञा विकल्पले भएन, अतः शी आदेश पनि भएन । पूर्वसवर्णदीर्घ र रुत्व भयो, 'दक्षिणार्+गाथकाः' भयो, रेफका स्थानमा यकार भयो, यकारको "हलि सर्वेषाम्"ले लोप भयो, 'दक्षिणा गाथकाः' सिद्ध भयो । दक्षिणा गाथकाः (कुशल गायकहरू)

**स्वमज्ञातीति**– दाजुभाइ र धनभिन्न अर्थलाई कहने स्वशब्दको गणसूत्रमा पाठ पढ्नाले प्राप्त भएको सर्वनामसंज्ञा जस्‌का विषयमा विकल्पले होस् ।

---

३६ देशवाचक शब्द बहुवचनान्त हुन्छ, यो संस्कृतव्याकरणको नियम हो ।

स्वे, स्वाः, आत्मीयाः, आत्मान इति वा । ज्ञातिधनवाचिनस्तु स्वाः, ज्ञातयोऽर्था वा ॥

**१५७. अन्तरं बहिर्योगोपसंव्यानयोः १ । १ । ३६ ॥**

बाह्ये परिधानीये चार्थेऽन्तरशब्दस्य प्राप्ता संज्ञा जसि वा । अन्तरे, अन्तरा वा गृहाः, बाह्या इत्यर्थः । अन्तरे, अन्तरा वा शाटकाः; परिधानीया इत्यर्थः ॥

**१५८. पूर्वादिभ्यो नवभ्यो वा ७ । १ । १६ ॥**

एभ्यो ङसिङ्योः स्मात्स्मिनौ वा स्तः । पूर्वस्मात्, पूर्वात् ।

---

**स्वे/स्वाः-** दाजुभाइ र धनभिन्न अर्थमा रहेको स्वशब्दलाई जस्को विवक्षामा "स्वमज्ञातिधनाख्यायाम्" ले विकल्पले सर्वनामसंज्ञा भयो । प्रथमाको बहुवचन जस् आयो, 'स्व+अस्' भयो, "जसः शी"ले जस्का स्थानमा शी आदेश भयो, अनुबन्धलोप भयो 'स्व+ई' भयो । यहाँ "आद्गुणः"लाई बाधेर "प्रथमयोः पूर्वसवर्णः"ले पूर्वसवर्णदीर्घ पाएको "नादिचि"ले निषेध गऱ्यो "आद्गुणः" ले गुण भयो 'स्वे', सर्वनामसंज्ञा नभएका पक्षमा "शी" आदेश भएन 'स्व+अस्' यहाँ पूर्वसवर्णदीर्घ, रुत्व, विसर्ग, भयो 'स्वाः' यसरी दुई रूप सिद्ध भए ।

**आत्मीया इति-** आफू सम्बन्धी र आफूहरूभन्दा जस्मा 'स्वे' 'स्वाः' यस्तो रूप हुन्छ ।

**ज्ञातिधनवाचिन इति-** दाजुभाइ र धनलाई कहने स्वशब्दको जस्मा त 'स्वाः' हुन्छ । ज्ञाति र धनवाचक स्वशब्दको सर्वनामसंज्ञा नहुने हुनाले "जसः शी" ले शी आदेश भएन, अतः राम शब्दमा झैं 'स्वाः' यस्तो रूप भयो । 'स्वाः' को अर्थ हो दाजुभाइहरू अथवा धन ।

**अन्तरं बहिरिति-** बाह्य अर्थ र परिधानीय अर्थमा अन्तर शब्दको गणसूत्रमा पाठ पढ्नाले सर्वत्र प्राप्त सर्वनासंज्ञा जस्का विषयमा विकल्पले होस् ।

**अन्तरे/अन्तराः-** अन्तरशब्दको बाह्य अर्थ र परिधानीय अर्थमा जस्का विषयमा "अन्तरं बहिर्योगोपसंव्यानयोः" यो सूत्रले सर्वनामसंज्ञा विकल्पले भएपछि जस् आयो, सर्वनामसंज्ञा भएको पक्षमा "जसः शी"ले शी आदेश भयो पूर्ववत् साधनप्रक्रिया भएपछि 'अन्तरे' रूप सिद्ध भयो । सर्वनाम संज्ञा नहुँदा रामशब्दको झै 'अन्तराः' रूप सिद्ध भयो ।

**अन्तरे अन्तरा वेति-** बाह्य अर्थको उदाहरण 'अन्तरे अन्तरा वा गृहाः' यो हो, यसको अर्थ 'बाहिरका घरहरू' हो । यसमा अझ अर्थ स्पष्ट गर्न 'नगराद् अन्तरे अन्तरा वा गृहाः' 'शहरदेखि बाहिरका घर', यो उदाहरण ठीक हुन्छ । 'गृहाः' को ठाउँमा 'शाटकाः' यो विशेष्य राखेपछि परिधानीय अर्थको उदाहरण- 'अन्तरे अन्तरा वा शाटकाः' यो दिएको छ । यसकोअर्थ 'पहिरन योग्य धोतीहरू' हो ।

**पूर्वादिभ्य इति-** पूर्वादि नौ शब्ददेखि विधान गरिएका ङसि र ङि का स्थानमा क्रमैले स्मात् आदेश र स्मिन् आदेश विकल्पले होऊन् ।

पूर्व आदि नौ शब्द "पूर्वपरावरदक्षिणोत्तरापराधराणि व्यवस्थायामसंज्ञायाम्" "स्वमज्ञाति धनाख्यायाम्" "अन्तरं बहिर्योगोपसंव्यानयोः" यी तीन सूत्रमा उल्लिखित पूर्व, पर, अवर, दक्षिण, उत्तर, अपर, अधर, स्व, अन्तर, यी शब्द हुन् ।

**पूर्वस्मात्-द्/पूर्वात्-द्-** पूर्वशब्ददेखि पञ्चमीको एकवचन ङसि आयो, अनुबन्धलोप भयो 'पूर्व+अस्' भयो । "पूर्वादिभ्यो नवभ्यो वा" ले वैकल्पिक स्मात् आदेश भयो, सवर्णदीर्घ भयो, जश्त्व, वैकल्पिक चर्त्व, भयो, 'पूर्वस्मात्', चर्त्व नभएमा 'पूर्वस्माद्', यी दुई रूप भए । स्मात् आदेश नभएका पक्षमा "टाङसिङसामिनात्स्याः" ले अस्का स्थानमा 'आत्' आदेश भयो, जश्त्व, चर्त्व भयो, 'पूर्वात्', चर्त्व नभएको पक्षमा 'पूर्वाद्' यी दुई रूप सिद्ध भए ।

---

पूर्वस्मिन्, पूर्वे । एवं परादीनाम् । शेषं सर्ववत् ॥

**१५९. प्रथमचरमतयाल्पार्द्धकतिपयनेमाश्व १ । १ । ३३ ॥**

एते जसि उक्तसंज्ञा वा स्युः । प्रथमे, प्रथमाः ॥ तयः प्रत्ययः । द्वितये, द्वियताः । शेषंरामवत् ॥ नेमे, नेमाः । शेषं सर्ववत् ॥ **वा.**(तीयस्य ङित्सु वा) । द्वितीयस्मै, द्वितीयायेत्यादि ।

---

**पूर्वस्मिन्, पूर्वे-** पूर्वशब्ददेखि सप्तमीको एक वचन ङि आयो, अनुबन्धलोप भयो, 'पूर्व+इ' भयो, "पूर्वादिभ्यो नवभ्यो वा" ले ङिको इका स्थानमा विकल्पले स्मिन् आदेश भयो 'पूर्वस्मिन्' सिद्ध भयो । स्मिन् आदेश नभएमा 'पूर्व+इ' यहाँ "आद्गुण" ले गुण भयो 'पूर्वे' यी दुई रूप भए ।

**एवमिति-** यस्तै किसिमले पर आदि आठ शब्दका पनि जस्, ङसि, ङि मा यस्तै रूप हुन्छन् । बाँकी सर्वशब्दका जस्तै रूप हुन्छन् ।

**प्रथमचरमेति-** प्रथम शब्द, चरम शब्द, तयप्रत्ययान्त शब्द, अल्प शब्द, अर्धशब्द, कतिपय शब्द, नेम शब्द, यी शब्दहरू जस्का विषयमा सर्वनामसंज्ञक विकल्पले होऊन् ।

**प्रथमे, प्रथमाः-** प्रथमशब्दलाई जस्का विवक्षामा "प्रथमचरम०" ले वैकल्पिक सर्वनाम संज्ञा भयो, जस् आयो, 'प्रथम+अस्' भयो । "जसः शी" ले जस्का स्थानमा शी आदेश भयो, 'प्रथम+ई' भयो । यहाँ "प्रथमयोःपूर्वसवर्णः"लाई "नादिचि"ले निषेध भएपछि "आद् गुणः"ले गुण भयो, 'प्रथमे' सिद्ध भयो । सर्वनामसंज्ञा नभएको पक्षमा 'प्रथम+अस्' यहाँ "प्रथमयोः०" ले पूर्वसवर्णदीर्घ भयो, 'प्रथमास्' रुत्व विसर्ग भयो, 'प्रथमाः', यसरी दुई रूप सिद्ध भए ।

**तय इति-** तय यो प्रत्यय हो । "प्रत्ययग्रहणे तदन्तग्रहणम्" यो परिभाषाले तय प्रत्ययान्तको ग्रहण हुन्छ । तय प्रत्ययान्त शब्द- द्वितय, द्वय, त्रितय, त्रय, चतुष्टय, पञ्चतय आदि हुन् ।

**द्वितये, द्वितयाः-** द्वितय शब्दको जस्का विषयमा "प्रथमचरम०"ले वैकल्पिक सर्वनामसंज्ञा भयो, जस् आयो,, जस्का स्थानमा शी आदेश भयो, पूर्ववत् प्रथमशब्दमा जस्तै प्रक्रिया भएपछि 'द्वितये' भयो । शी नभएका पक्षमा पूर्ववत् पूर्वसवर्णदीर्घ भयो, 'द्वितयाः' यसरी दुई रूप सिद्ध भए ।

**शेषमिति-** बाँकी रूप रामशब्दका जस्तै हुन्छन् । अर्थात् प्रथम शब्द, चरम शब्द, तय प्रत्ययान्त शब्द, अल्प शब्द, अर्ध शब्द यी शब्दका जस् बाहेक अरू विभक्ति वचनमा राम शब्दका जस्तै रूप हुन्छन् ।

**नेमे/नेमाः-** नेम शब्दको "सर्वादीनि सर्वनामानि" ले पाएको नित्य सर्वनाम संज्ञालाई बाधेर "प्रथमचरम०" यस सूत्रले जस्का विषयमा विकल्पले भयो र जस् आयो, जस्का स्थानमा 'शी' आदेश, पूर्वसवर्णदीर्घ निषेध भएपछि गुण भयो, 'नेमे' यो रूप सिद्ध भयो । सर्वनाम संज्ञा नभएको पक्षमा पूर्वसवर्णदीर्घ, रुत्व विसर्ग भयो, 'नेमाः' यो रूप सिद्ध भयो ।

**शेषमिति-** बाँकी विभक्ति र वचनमा नेम शब्दका सर्व शब्दका जस्तै रूप हुन्छन् । (वा.) **तीयस्येति** तीयप्रत्ययान्त शब्दको ङित्विभक्तिका विषयमा विकल्पले सर्वनामसंज्ञा होस् ।

ङित् विभक्ति ङे, ङसि, ङस, ङि हुन् । यी मध्ये ङस्मा सर्वनाम संज्ञाको फल छैन । अन्यत्र-स्मै, स्मात्, स्मिन् आदेश गर्ने फल छ । लाघवार्थ ङित्सु भनेको हो ।

**द्वितीयस्मै, द्वितीयायेत्यादि-** द्वितीय शब्दका द्वितीयस्मै, द्वितीयाय इत्यादि रूप हुन्छन् ।

**द्वितीयस्मै/द्वितीयाय-** द्वितीय शब्दको चतुर्थी एकवचन ङेको विवक्षामा "तीयस्य ङित्सु वा" ले विकल्पले सर्वनाम संज्ञा भयो, ङे आयो, ङेका स्थानमा "सर्वनाम्नः स्मै"ले स्मै आदेश भयो, 'द्वितीयस्मै' सिद्ध भयो । सर्वनामसंज्ञा नभएमा ङेका स्थानमा "ङेर्यः"ले य आदेश भयो, दीर्घ भयो, 'द्वितीयाय' सिद्ध भयो ।

---

एवं तृतीयः ॥ निर्जरः ॥

**१६०. जराया जरसन्यतरस्याम् ७ । २ । १०१ ॥**

अजादौ विभक्तौ (प.) पदाङ्गाधिकारे तस्य च तदन्तस्य च । (प.) निर्दिश्यमानस्यादेशा भवन्ति । (प.) एकदेशविकृतमनन्यवत्, इति जरशब्दस्य जरस् ।

---

यस्तै ङसिमा द्वितीयस्मात्/द्वितीयात्, ङि मा द्वितीयस्मिन्/द्वितीये, यी रूप हुन्छन् । अन्यत्र राम शब्दका जस्तै रूप हुन्छन् ।

**एवमिति**- यस्तै तृतीयशब्द पनि हो । अर्थात् तीय प्रत्ययान्त शब्द हो । द्वितीय शब्दका जस्तै रूप हुन्छन् ।

**निर्जरः**- निर्जर शब्ददेखि प्रथमाको एकवचन सु आयो, उकारको अनुबन्धलोप भयो रुत्व विसर्ग भयो 'निर्जरः' सिद्ध भयो ।

**जराया इति**- जरा शब्दका स्थानमा जरस् आदेश विकल्पले होस् अच् आदिमा हुने विभक्ति पर भएमा । सूत्रमा रहेको "अन्यतरस्याम्" विशेषण हो । यसको विशेष्य "संहितायाम्" यो शब्द अध्याहार गरेपछि "अन्यतरस्याम् संहितायाम्" अर्को संहितामा भन्ने अर्थ हुन्छ । यो संहिता (पाणिनीय व्याकरण)मा हैन कि अर्के संहितामा अर्को कुनै व्याकरणमा यो अर्थ हो । अतः पाणिनिको मतमा नभएकोले वैकल्पिक भन्ने अर्थ फलित भयो ।

**(प.) पदाङ्गाधिकारे इति**- पदाधिकार र अङ्गाधिकार सूत्रमा गृह्यमाणको र तदन्त अर्थात् गृहयमाणान्तको पनि ग्रहण हुन्छ । अष्टाध्यायी सूत्रपाठमा पदस्य ८।१।१६ अङ्गस्य ६।४।१ यी दुई अधिकार सूत्र छन् । "पदस्य"को अधिकार जुन जुन सूत्रमा जान्छ ती पदाधिकारसूत्र र "अङ्गस्य" को अधिकार जुन जुन सूत्रमा जान्छ ती अङ्गाधिकार सूत्र हुन् । अष्टमाध्यायको पहिलो पाउको सोह्रौं सूत्र "पदस्य"देखि पाउ समाप्ति सम्म "पदस्य" को अधिकार जान्छ । छैटौं अध्यायको चौथो पाउको प्रथमसूत्र "अङ्गस्य" देखि सप्तमाध्यायको समाप्तिपर्यन्त "अङ्गस्य" को अधिकार जान्छ । "जराया जरसन्यतरस्याम्" यो अङ्गाधिकार सूत्र हो, अतः जरा शब्दका स्थानमा र जराशब्दान्त निर्जर, अजर, आदिशब्दका स्थानमा पनि जरस् आदेश प्राप्त हुन्छ ।

(प.) **निर्दिश्येति**- निर्दिश्यमानका स्थानमा आदेश हुन्छन् । "षष्ठीप्रकृतिजन्य प्राथमिकोपस्थितिविषयत्वं निर्दिश्यमानत्वम्" षष्ठ्यन्तप्रकृतिजन्य पहिलो उपस्थितिको विषयलाई निर्दिश्यमान भनिन्छ । "जराया जरसन्यतरस्याम्" यस सूत्रमा षष्ठ्यन्तप्रकृति छ जरायाः, तज्जन्य पहिलो उपस्थिति जरा शब्दको हुन्छ र जरा शब्दका स्थानमा नै जरस् आदेश हुन्छ निर्जर सबैका स्थानमा जरस् हुँदैन ।

यसरी निर्जरशब्दान्तर्गत जराशब्दका स्थानमा त जरस् आदेश हुने भयो, तर यहाँ जरा शब्द छैन जरशब्द छ र जरका स्थानमा जरस् गर्नको निमित्त 'एकदेशविकृतमनन्यवत्' यो परिभाषा चाहिन्छ ।

(प.) "एकदेशविकृतिमनन्यवत्" एक छेउ बिग्रेको भए पनि अर्को जस्तो हुँदैन । यसै परिभाषाको अर्थ स्पष्ट गर्ने अर्को लोकोक्ति छ "छिन्ने पुच्छेऽपि शुनको न च गौर्न च गर्दभः" पुच्छर काटिएको भए पनि कुकुर कुकुर नै हुन्छ गाई अथवा गधा हुँदैन । त्यस्तै यहाँ निर्जर शब्दान्तर्गत जराशब्दको ह्रस्व भएर जर भएको पनि त्यो जरा शब्द नै ठहर्छ ।

**इतीति**- यो परिभाषा लगाएर जरा शब्दका स्थानमा जरस् आदेश हुन्छ ।

निर्जरसौ । निर्जरस इत्यादि । पक्षे हलादौ च रामवत् ॥

**निर्जरसौ-** निर्जर शब्ददेखि प्रथमा विभक्तिको द्विवचन औ आयो, 'निर्जर+औ' भयो, भए पछि "पदाङ्गाधिकारे तस्य तदन्तस्य च ग्रहणम्" यो परिभाषा लाएर "जराया जरसन्यतरस्याम्" ले जराशब्दान्त 'निर्जर'शब्दका स्थानमा जरस् पाएमा "अलोन्त्यस्य" लाई बाधेर 'अनेकाल् शित्सर्वस्य'ले निर्जर सबैको स्थानमा जरस् आदेश पायो पाएमा, "निर्दिश्यमानस्यादेशा भवन्ति" "आदेश निर्दिश्यमानका स्थानमा हुन्छन्" यो न्याय लाएर आदेश गर्ने सूत्रमा रहेको षष्ठ्यन्त पद "जरायाः" छ तज्जन्य प्राथमिकोपस्थितिविषयता जरा शब्दमा भएकोले जरा शब्दका स्थानमा मात्र जरस् हुने भयो तर यहाँ जराशब्द छैन जर शब्द छ र "एकदेशविकृतमन्यवत्" यो न्यायले एक छेउ विग्रे पनि अर्को जस्तो हुँदैन भनेकोले निर्जरभित्र रहेको जरा शब्द जरा शब्दको ह्रस्व भएर भएको छ ता पनि जरा शब्द नै कहलायो र 'जर'का स्थानमा जरस् आदेश विकल्पले भयो । 'निर्जरस्+औ' भयो स् गएर औमा लाग्यो, 'निर्जरसौ' सिद्ध भयो । जस्मा 'निर्जर+अस्', 'निर्जरसस्' 'निर्जरसः' यो रूप हुन्छ । यस्तै प्रकारले अजादि विभक्तिमा एकपक्षे जरस् आदेश भएर रूप बन्दछन् ।

भिस्मा ऐस् आदेश भएपछि जरस् आदेश पायो पाएमा "उपजीव्यविरोधान्न जरस्" उपजीव्य अर्थात् कारणको विरोध भएकोले जरस् आदेश हुँदैन । यसको आशय अकारान्त अङ्गलाई कारण मानेर भिस्का स्थानमा ऐस् भयो । त्यही ऐस् अजादि विभक्ति पर मानेर जरस् आदेश गर्दा अकारान्त अङ्ग विनाश हुन्छ । ऐस् आदेश आफ्नो उपजीव्य अकारान्त अङ्गको विनाश गर्ने कारण बन्न सक्दैन, अतः जरस् आदेश हुँदैन । 'निर्जरैः' यही रूप हुन्छ ।

**पक्षे हलादौ चेति-** जरस् आदेश नभएको पक्षमा र हलादि विभक्तिमा निर्जर शब्दका राम शब्दका जस्तै रूप हुन्छन् ।

**निर्जर शब्दका रूप-**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमा | निर्जरः | निर्जरसौ<br>निर्जरौ | निर्जरसः<br>निर्जराः |
| द्वितीया | निर्जरसम्<br>निर्जरम् | निर्जरसौ<br>निर्जरौ | निर्जरसः<br>निर्जरान् |
| तृतीया | निर्जरसा<br>निर्जरेण | निर्जराभ्याम् | निर्जरैः |
| चतुर्थी | निर्जरसे<br>निर्जराय | निर्जराभ्याम् | निर्जरेभ्यः |
| पञ्चमी | निर्जरसः<br>निर्जरात्/द् | निर्जराभ्याम् | निर्जरेभ्यः |
| षष्ठी | निर्जरसः<br>निर्जरस्य | निर्जरसोः<br>निर्जरयोः | निर्जरसाम्<br>निर्जराणाम् |
| सप्तमी | निर्जरसि<br>निर्जरे | निर्जरसोः<br>निर्जरयोः | निर्जरेषु |
| संवोधन | हे निर्जर ! | हे निर्जरसौ !<br>हे निर्जरौ ! | हे निर्जरसः !<br>हे निर्जराः ! |

विश्वपाः ॥

**१६१. दीर्घाज्जसि च ६ । १ । १०५ ॥**

दीर्घाज्जसि इचि च परे पूर्वसवर्णदीर्घो न स्यात् । विश्वपौ । विश्वपाः । हे विश्वपाः । विश्वपाम् । विश्वपौ ॥

**१६२. सुडनपुंसकस्य १ । १ । ४३ ॥**

स्वादिपञ्चवचनानि सर्वनामस्थानसंज्ञानि स्युरक्लीबस्य ॥

**१६३. स्वादिष्वसर्वनामस्थाने १ । ४ । १७ ॥**

कप्प्रत्ययावधिषु स्वादिष्वसर्वनामस्थानेषु पूर्वं पदं स्यात् ॥

**१६४. यचि भम् १ । ४ । १८ ॥**

यादिष्वजादिषु च कप्प्रत्ययावधिषु स्वादिष्वसर्वनामस्थानेषु पूर्वं भसंज्ञं स्यात् ।

---

[३७]**विश्वपाः** (जगत्को रक्षा गर्ने ईश्वरः) विश्वपा शब्ददेखि प्रथमाको एकवचन सु आयो, उकारको इत्संज्ञा र लोप भयो, रुत्व विसर्ग भयो 'विश्वपाः' रूप सिद्ध भयो ।

**दीर्घादिति-** दीर्घदेखि जस् र इच् पर भएमा पूर्वसवर्णदीर्घ नहोस् ।

**विश्वपौ-** विश्वपाशब्ददेखि औ आयो, 'विश्वपा+औ' भयो "वृद्धिरेचि" ले वृद्धिपायो त्यसलाई बाधेर "प्रथमयोः०" ले पूर्वसवर्णदीर्घ पाएकोमा दीर्घ 'विश्वपा'को आकारदेखि इच् औ पर भएकोले "दीर्घाज्जसि च" ले पूर्वसवर्णदीर्घ निषेध भयो । "बाधकाभावे०" परिभाषा लगाएर "वृद्धिरेचि" ले वृद्धि भयो, 'विश्वपौ' यो रूप सिद्ध भयो ।

**विश्वपाः-** विश्वपा शब्ददेखि जस् आयो, 'विश्वपा+अस्' भयो "अकःसवर्णे दीर्घः"लाई वाधेर "प्रथमयोः०"ले पूर्वसवर्णदीर्घ पाएकोमा "दीर्घाज्जसि च" ले निषेध भयो, बाधकाभावे० लगाएर "अकः सवर्णे०"ले सवर्ण दीर्घ भयो, 'विश्वपास्' भयो रुत्व विसर्ग भयो, 'विश्वपाः' सिद्ध भयो ।

जस्मा पूर्वसवर्णदीर्घ भए पनि, सवर्ण दीर्घ भए पनि, रूप यौटै हुन्छ, दीर्घनिषेध गरेको फल 'वहुश्रेयसी' 'लक्ष्मी' आदि शब्दमा देखिन्छ ।

**हे विश्वपाः** संवोधनमा प्रथमाको एकवचन सु आयो,, रुत्व, विसर्ग भयो, 'विश्वपाः', हे शब्दको पूर्वप्रयोग भयो 'हे विश्वपाः' । ह्रस्वान्त अङ्ग नहुनाले संबुद्धिको लोप भएन ।

**विश्वपाम्-** विश्वपा शब्ददेखि द्वितीयाको द्विवचन् अम् आयो,, 'विश्वपा+अम्' भयो, "प्रथमयोः०" लाई वाधेर "अमि पूर्वः" ले पूर्वरूप भयो 'विश्वपाम्' सिद्ध भयो ।

**विश्वपौ-** विश्वपा शब्ददेखि द्वितीयाको द्विवचन औट् आयो, टकारको अनुबन्ध लोप भयो, 'विश्वपा+औ' भयो । पूर्ववत् प्रथमाको द्विवचनमा झैं प्रक्रिया भयो 'विश्वपौ' सिद्ध भयो ।

**सुडनपुमिति-** सु आदि गरिएका पाँचवचन सर्वनामस्थान संज्ञक होउन्, नपुंसक लिङ्गलाई छोडेर ।

**स्वादिष्विति-** कप् प्रत्ययसम्मको अवधि भएका सर्वनामस्थानभिन्न स्वादिप्रत्यय पर भएमा पूर्व, पदसंज्ञक होस् ।

**यचीति-** कप् प्रत्ययसम्मका अवधि भएका यकार आदिमा हुनेर अच् आदिमा हुने सर्वनामस्थानभिन्न स्वादिप्रत्यय पर भएमा पूर्व, भसंज्ञक होस् ।

सूत्रमा कप् प्रत्ययसम्मको अवधि भएका स्वादि प्रत्यय भन्नाले "स्वौजसमौट्" ४।१।२

---

३७ विश्वं पाति इति विग्रहे "अन्येभ्योऽपि दृश्यते" इति विच् सर्वापहारिलोपः ।

**१६५. आ कडारादेका संज्ञा १ । ४ । १ ॥**
इत ऊर्ध्वं 'कडाराः कर्मधारये' इत्यतः प्रागेकस्यैकैव संज्ञा ज्ञेया । या पराऽनवकाशा च ॥

**१६६. आतो धातोः ६ । ४ । १४० ॥**
आकारान्तो यो धातुस्तदन्तस्य भस्याङ्गस्य लोपः । "अलोऽन्त्यस्य" । विश्वपः । विश्वपा । विश्वपाभ्यामित्यादि ।

---

देखि लिएर "उरः प्रभृतिभ्यः कप्" ५।४।१५१ सूत्रले गर्ने कप् प्रत्ययको प्रकरण- शेषाद्विभाषा ५।४।१५४ ले गर्ने कप् प्रत्ययसम्म लिइन्छ । अर्थात् कप्प्रत्यय अभिव्याप्य छ ।

**आकडारादिति** – यो सूत्र १।४।१ देखि माथि "कडाराः कर्मधारये" २।२।३८ यो सूत्रदेखि पूर्व यौटाको यौटै संज्ञा जान्नू । जो पर छ र अनवकाश पनि छ सोही संज्ञा होस् ।

**या परेति**- कप्प्रत्ययसम्मको अवधि भएका सर्वनामस्थानभिन्न स्वादिप्रत्ययपर भएमा यी दुवै सूत्रले यौटाले पदसंज्ञा र अर्कोले भसंज्ञा पाउँछन् । "स्वादिष्वसर्वनामस्थाने" ले पदसंज्ञा सर्वत्र पाउँछ, तर "यचि भम्" ले यकार र अच् आदिमा हुने प्रत्यय पर भएमा मात्र पाउँछ । "स्वादिष्वसर्वनामस्थाने" ले सर्वत्र पदसंज्ञा गर्ने हो भने "यचि भम्" अनवकाश हुन्छ । (यसले भसंज्ञा गर्ने ठाउँ बाँकीरहन्न) अतः 'स्वादिष्वसर्वनामस्थाने'लाई बाधेर यकारादिर अजादि प्रत्यय पर भएमा "यचि भम्" ले भसंज्ञा नै हुन्छ । यकार बाहेक अरू हलादि प्रत्यय पर भएमा पद संज्ञा हुन्छ 'या पराऽनवकाशा च' यो वाक्यांशको यही तात्पर्य हो ।

**आत इति**- आकारान्त जो धातु त्यो अन्तमा हुने भसंज्ञक अङ्गको लोप होस् । "अलोऽन्त्यस्य" लगाएर आकारको लोप हुन्छ ।

**विश्वपः** विश्वपा शब्ददेखि द्वितीयाको बहुवचन शस् आयो, अनुबन्धलोप भयो, 'विश्वपा+अस्' भयो, कप् प्रत्ययसंगको अवधि भएको सर्वनामस्थान भिन्न स्वादिप्रत्यय अस् पर छ र विश्वपा यसलाई "स्वादिष्वसर्वनामस्थाने" ले पदसंज्ञा पायो, तद्वत् अच् आदिमा हुने स्वादिप्रत्यय पर भएको हुनाले "यचि भम्" ले भसंज्ञा पनि पायो, कुन संज्ञा गर्ने त भने "आकडारादेका संज्ञा" यस सूत्रले १।४।१। देखि माथि "कडाराः कर्मधारये" २।२।३८ सम्म यौटाको यौटै संज्ञा हुन्छ, भनेकोले यी दुवै संज्ञा १।४।१ देखि २।२।३८ सम्मका हुनाले यौटै संज्ञा त हुने भयो कुन हुने त भने ? (यापराऽनवकाशा च) जो पर छ अनवकाश पनि छ, त्यही संज्ञा होस्, भनेकोले "स्वादिस्वसर्वनामस्थाने" भन्दा 'यचि भम्' पर पनि छ, अनवकाश पनि छ र यहाँ "अजादि स्वादि" प्रत्यय पर हुनाले विश्वपालाई भसंज्ञा नै भयो भसंज्ञा भएपछि "आतो धातोः" ले आकारान्त धातु छ पाधातु, त्यो अन्तमा हुने भसंज्ञक अङ्ग छ विश्वपा र 'विश्वपा+अस्' यहाँ 'विश्वपा' सवैको लोप पायो "अलोऽन्त्यस्य" लगाएर विश्वपाका आकारको लोप भयो, 'विश्वप्+अस्' भयो, प गएर अस्का अकारमा लाग्यो 'विश्वपस्' भयो, सकारको रुत्व, विसर्ग भयो, "विश्वपः" सिद्ध भयो ।

**विश्वपा**- विश्वपा शब्ददेखि तृतीया विभक्तिको एकवचन टा आयो, 'विश्वपा+आ' भयो यहाँ पनि पूर्ववत् भसंज्ञा भयो, "आतो धातोः" ले "अलोन्त्यस्य" लगाएर आकारको लोप भयो 'विश्वपा' सिद्ध भयो । यस्तै प्रकारले ङे आदि अजादि विभक्तिमा आकारको लोप हुन्छ ।

**विश्वपाभ्याम्**- विश्वपा शब्ददेखि तृतीयाको द्विवचन भ्याम् आयो, 'विश्वपाभ्याम्' सिद्ध भयो । 'विश्वपाभ्याम्' यहाँ भ्याम्लाई पर राखेर विश्वपालाई पदसंज्ञा त हुन्छ, तर पदसंज्ञाको फल केही छैन ।

एवं शङ्खध्मादयः । धातोः किम् । हाहान् ॥

विश्वपाशब्दका रूपहरू–

| | | | |
|---|---|---|---|
| प्र. | विश्वपाः | विश्वपौ | विश्वपाः । |
| द्वि. | विश्वपाम् | विश्वपौ | विश्वपः । |
| तृ. | विश्वपा | विश्वपाभ्याम् | विश्वपाभिः । |
| च. | विश्वपे | विश्वपाभ्याम् | विश्वपाभ्यः । |
| प. | विश्वपः | विश्वपाभ्याम् | विश्वपाभ्यः । |
| ष. | विश्वपः | विश्वपोः | विश्वपाम् । |
| स. | विश्वपि | विश्वपोः | विश्वपासु । |
| सं. | हे विश्वपाः | हे विश्वपौ | हे विश्वपाः । |

**एवमिति-** यस्तै प्रकारले शङ्खध्मा आदि शब्द पनि जान्नु ।

**धातोः किमिति-** धातोः किम् "आतो धातोः" यस सूत्रमा धातोः" किन भन्नु ? नभन्ने हो भने सूत्रको अर्थ आकारान्त भसंज्ञक अङ्गको लोप होस्, यस्तो होला, यस्तो अर्थ भए दोषजाला कहाँ ? हाहाशब्दको द्वितीयाको बहुवचन 'हाहा+अस्' यहाँ । यहीँ पनि हाहाका आकारको लोप भएर अनिष्टरूप सिद्ध होला । सो नहोस् भनेर "धातोः" भनियो धातोः भनेपछि हाहा यो आकारान्त धातु छैन र आकारको लोप भएन, पूर्वसवर्णदीर्घ भयो, सकारको "तस्माच्छसो नः पुंसि" ले नकार भयो 'हाहान्'।

**हाहा-** तृतीयाको एकवचन टामा 'हाहा+आ' यहाँ "अकःसवर्णे दीर्घः" ले दीर्घ भयो 'हाहा' । भ्याम् भिस्मा, 'हाहाभ्याम्,' 'हाहाभिः' ।

**हाहै-** चतुर्थीको एकवचन ङे मा 'हाहा+ए' मा "वृद्धिरेचि"ले वृद्धि भयो 'हाहै' । भ्याम् भ्यस्मा 'हाहाभ्याम्' । 'हाहाभ्यः' ।

**हाहा-** पञ्चमीको एकवचन ङसिमा 'हाहा+अस्'मा "अकः सवर्णे दीर्घः" ले दीर्घ भयो 'हाहाः' । भ्याम्, भ्यस्मा पूर्ववत् ।

**हाहाः-** षष्ठीको एकवचन ङस्मा पूर्ववत् सवर्णदीर्घ भयो 'हाहाः' ।

**हाहौः-** षष्ठीको द्विवचन ओस्मा 'हाहा+ओस्' वृद्धि भयो, 'हाहौः' ।

**हाहाम्-** षष्ठीको बहुवचनमा 'हाहा+आम्' दीर्घ भयो, 'हाहाम्' ।

**हाहे-** सप्तमीको एकवचनमा 'हाहा+इ' गुण भयो, 'हाहे' । ओस्मा- 'हाहा+ओस्' यहाँ "वृद्धिरेचि"ले वृद्धि भयो, 'हाहौः' सुप्मा 'हाहासु" ।

सु औ जस् अम् औट् मा 'हाहाः', 'हाहौ', 'हाहाः', 'हाहाम्', 'हाहौ' क्रमशः यी रूप हुन्छन् ।

हाहा शब्दका रूप-

| **विभक्ति** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्र. | हाहाः | हाहौ | हाहाः |
| द्वि. | हाहाम् | हाहौ | हाहान् |
| तृ. | हाहा | हाहाभ्याम् | हाहाभिः |
| च. | हाहै | हाहाभ्याम् | हाहाभ्यः |
| प. | हाहाः | हाहाभ्याम् | हाहाभ्यः |
| ष. | हाहाः | हाहौः | हाहाम् |
| स. | हाहे | हाहौः | हाहासु |
| सं. | हे हाहाः ! | हे हाहौः ! | हे हाहाः ! |

हरिः । हरी ॥

**१६७. जसि च ७ । ३ । १०९ ॥**

ह्रस्वान्तस्याङ्गस्य गुणः । हरयः ॥

**१६८. ह्रस्वस्य गुणः ७ । ३ । १०८ ॥**

सम्बुद्धौ । हे हरे । हरिम् । हरी । हरीन् ॥

**१६९. शेषो घ्यसखि १ । ४ । ७ ॥**

शेष इति स्पष्टार्थम् । अनदीसंज्ञौ ह्रस्वौ याविदुतौ तदन्तं सखिवर्जं घिसंज्ञम् ॥

---

**हरिः-** हरिशब्ददेखि प्रथमाको एकवचन सु आयो, अनुबन्धलोप भयो 'हरि+स्' भयो । सकारको रुत्व विसर्ग भयो 'हरिः' सिद्ध भयो ।

**हरी-** हरि शब्ददेखि प्रथमाको द्विवचन औ आयो, 'हरि+औ' भयो, यण्लाई बाधेर "प्रथमयोः पूर्वसवर्णः" ले पूवसवर्णदीर्घ भयो, 'हरी' सिद्ध भयो ।

**जसि च-** ह्रस्व अन्तमा हुने अङ्गका स्थानमा गुण होस् जस् पर भएमा ।

**हरयः-** हरि शब्ददेखि प्रथमाको बहुवचन् जस् आयो, 'हरि+अस्' भयो "यस्मात् प्रत्ययविधि०" ले अस्लाई पर राखेर हरिलाई अङ्गसंज्ञा भयो, ह्रस्वान्त अङ्ग हरि यसका स्थानमा जस् पर भएको हुनाले "जसि च" ले गुण गर्दा "अलोन्त्यस्य" लाएर अन्त्य अल् इकारका स्थानमा गुण भयो, 'हरे+अस्' भयो, एकारका स्थानमा "एचोऽयवायावः"ले अय् आदेश भयो, 'हरयस्' भयो, रुत्व विसर्ग भयो, 'हरयः' सिद्ध भयो ।

**ह्रस्वस्येति-** ह्रस्वान्त अङ्गका स्थानमा गुण होस् सम्बुद्धि पर भएमा ।

**हे हरे-** हरिशब्ददेखि संबोधनअर्थमा प्रथमाको एकवचन सु आयो, 'सु' लाई सम्बुद्धिसंज्ञा भयो अनुबन्धलोप भयो 'हरि+स्' भयो, संबुद्धि पर भएको हुनाले "अलोन्त्यस्य" लाएर हरिका इकारका स्थानमा "हस्वस्य गुणः"ले गुण भयो, 'हरे+स्' भयो "एङ् ह्रस्वात्सबुद्धेः" ले सकारको लोप भयो, हे शब्दको पूर्व प्रयोग भयो 'हे हरे' सिद्ध भयो । संबोधनको द्विवचनमा र बहुवचनमा प्रथमामा जस्तै रूप हुन्छन् हेशब्दको पूर्व प्रयोग गरेपछि– 'हे हरी', 'हे हरयः', यी रूप हुन्छन् ।

**हरिम्-** हरिशब्ददेखि द्वितीयाको एकवचन अम् आयो, 'हरि+अम्' भयो "प्रथमयोः०" ले पाएको पूर्वसवर्णदीर्घलाई बाधेर "अमि पूर्वः"ले पूर्वरूप भयो 'हरिम्' सिद्ध भयो ।

**हरी-** हरि शब्ददेखि द्वितीयाको द्विवचन 'औट' आयो, ट्कारको इत्संज्ञा लोप भयो 'हरि+औ' भयो "प्रथमयोः पूर्वसवर्णः" ले पूर्वसवर्णदीर्घ भयो 'हरी' सिद्ध भयो ।

**हरीन्-** हरि शब्ददेखि द्वितीयाको बहुवचन शस् आयो, 'हरि+अस्' भयो, यण्लाई बाधेर पूर्वसवर्ण दीर्घ हुँदा हरिको इकार र अस्को अकारका स्थानमा पूर्वको 'इ' को सवर्ण दीर्घ ईकार भयो "तस्माच्छसोः०"ले सकारका स्थानमा नकार भयो 'हरीन्' ।

**शेष इति-** शेष शब्द स्पष्टका निमित्त छ । अर्थात् नदी संज्ञा नभएका भन्ने अर्थ शेष शब्दले बुझाउँछ । नदी संज्ञा नभएका जो ह्रस्व इकार उकार त्यो अन्तमा हुने, सखिशब्द बाहेक अरू शब्द 'घि'संज्ञक होस् ।

यस सूत्रले रवि, कवि, ऋषि, मुनि, भानु, विष्णु आदि इकारान्त उकारान्त शब्दको घिसंज्ञा हुन्छ ।

---

**१७०. आङो नाऽस्त्रियाम् ७ । ३ । १२० ॥**

घेः परस्याङो ना स्यादस्त्रियाम् । आङिति टासंज्ञा प्राचाम् । हरिणा । हरिभ्याम् । हरिभिः ॥

**१७१. घेर्ङिति ७ । ३ । १११ ॥**

घिसंज्ञकस्य ङिति सुपि गुणः । हरये । हरिभ्याम् । हरिभ्यः ॥

**१७२. ङसिङसोश्च ६ । १ । ११० ॥**

एङो ङसिङसोरति पूर्वरूपमेकादेशः । हरेः २ । हर्योः २ । हरीणाम् ॥

---

**आङो नेति**- घिसंज्ञक अङ्गदेखि पर रहेका आङ्का स्थानमा ना आदेश होस् स्त्रीलिङ्गलाई छोडेर ।

**आङिति**- प्राचीन आचार्यको मतमा आङ् यो टाको नाम हो ।

**हरिणा**- हरिशब्द नदी संज्ञा नभएको ह्रस्व इकारान्तशब्द हुनाले यसलाई "शेषो ध्यसखि" ले घिसंज्ञा भयो । हरिशब्ददेखि तृतीयाको एक वचन 'टा' आयो, "चुटू"ले टकारको इत्संज्ञा र लोप भयो, 'हरि+आ' भयो । घिसंज्ञक अङ्ग हरिदेखि पर रहेको हुनाले टाको आ (आङ्) का स्थानमा "आङो नाऽस्त्रियाम्"ले 'ना'आदेश भयो, "अट्कुप्वाङनुम्व्यवायेऽपि" ले नकारका स्थानमा णकार भयो 'हरिणा' सिद्ध भयो ।

**हरिभ्याम्, हरिभिः** हरि शब्दको तृतीयाको द्विवचनमा 'हरिभ्याम्', वहुवचनमा 'हरिभिः' यी रूप सिद्ध भए ।

**घेरिति**- घिसंज्ञक अङ्गका स्थानमा ङित्विभक्ति सुप् पर भएमा गुण होस् । यसले गुण गर्दा "अलोऽन्त्यस्य" लगाएर अन्त्य अल् (वर्ण) का स्थानमा हुन्छ ।

**हरये**- हरि शब्दलाई "शेषोध्यसखि"ले घिसंज्ञा भएपछि हरिशब्ददेखि चतुर्थीको एकवचन ङे आयो, अनुबन्धलोप भयो 'हरि+ए' भयो, 'ए' यो ङिद्विभक्ति सुप् पर हुनाले घिसंज्ञक अङ्ग हरिका स्थानमा "घेर्ङिति" ले गुण गर्दा "अलोऽन्त्यस्य" लाएर हरिका इकारका स्थानमा गुण हुँदा "स्थानेऽन्तरतमः" यो सूत्र लगाएर आन्तरतम्यात् एकार आदेश भयो 'हरे+ए' भयो, अय् आदेश भयो 'हरये' सिद्ध भयो । द्विवचन बहुवचनमा 'हरिभ्याम्', 'हरिभ्यः' यी दुई रूप हुन्छन् ।

**ङसिङसोरिति**- एङ्का स्थानमा ङसि र ङस् संबन्धी ह्रस्वअकार पर भएमा पूर्वरूप एकादेश होस् ।

**हरेः** घिसंज्ञा भएपछि हरि शब्ददेखि पञ्चमीको एकवचन ङसि आयो, । 'हरि+अस्' भयो, घिसंज्ञक अङ्ग हरिका अन्त्य अल्-इकारका स्थानमा "घेर्ङिति" ले गुण भयो 'हरे+अस्' भयो, यहाँ एङ् हरेको एकारदेखि ङसि सम्बन्धी ह्रस्व अकार पर छ अस्को अकार र "ङसिङसोश्च" ले पूर्वको एकार र परको अकारका स्थानमा पूर्वरूप एकार एकादेश भयो 'हरेस्' भयो, रुत्व विसर्ग भयो, 'हरेः' सिद्ध भयो । द्विवचनमा 'हरिभ्याम्', बहुवचनमा 'हरिभ्यः' चतुर्थीका जस्तै रूप हुन्छन् ।

**हरेः** "शेषेध्यसखि" ले 'हरि' यसलाई घिसंज्ञा भएपछि हरिशब्ददेखि षष्ठीको एक वचन ङस् आयो, 'हरि+अस्' भयो, "घेर्ङिति"ले गुण भयो 'हरे+अस्' भयो । "ङसिङसोश्च"ले पूर्वरूप एकादेश भयो, 'हरेस्' भयो, रुत्व विसर्ग भयो, 'हरेः' सिद्ध भयो । पञ्चमी र षष्ठीका एकवचनमा पनि 'हरेः' यही रूप हुन्छ ।

**हर्योः** हरिशब्ददेखि षष्ठीको द्विवचन ओस् आयो, 'हरि+ओस्' भयो "इको यणचि" ले यण् भयो 'हर्योस्' भयो रुत्व, विसर्ग भयो, 'हर्योः' सिद्ध भयो ।

**हरीणाम्**- हरि शब्ददेखि षष्ठीको बहुवचन आम् आयो, 'हरि+आम्' भयो 'हरि+आम्' यहाँ ह्रस्व अन्तमा हुने अङ्ग हरिदेखि पर रहेको आम् हुनाले "ह्रस्वनद्यापो नुट्" ले आम्को नुट् आगम भयो, 'हरि+नाम्' भयो । "नामि" ले हरिका इकारको स्थानमा दीर्घ ईकार भयो 'हरी+नाम्' "अट्कुप्वाङ्०" ले नाम्का नकारको णत्व भयो 'हरीणाम' यो रूप सिद्ध भयो ।

---

**१७३. अच्च घेः ७ । ३ । ११९ ॥**

इदुद्भ्यामुत्तरस्य ङेरौत्, घेरच्च । हरौ । हरिषु । एवं कव्यादयः ॥

**१७४. अनङ् सौ ७ । १ । ९३ ॥**

सख्युरङ्गस्यानङादेशोऽसम्बुद्धौ सौ ।

**१७५. अलोऽन्त्यात्पूर्व उपधा १ । १ । ६५ ॥**

अन्त्यादलः पूर्वो वर्ण उपधासंज्ञः ॥

---

**अच्चेति-** ह्रस्वइकार ह्रस्वउकारदेखि पर रहेका ङिका स्थानमा औकार आदेश होस् घिसंज्ञक अङ्गका स्थानमा अकार पनि होस् ।

**हरौ-** हरिशब्दलाई "शेषो घ्यसखि" ले घिसंज्ञा भएपछि हरि शब्ददेखि सप्तमीको एकवचन ङि आयो,, 'हरि+इ' भयो, "घेर्ङिति" ले गुण पायो त्यसलाई बाधेर यहाँ हरिको ह्रस्व इकारदेखि पर रहेको ङि हुनाले "अच्च घेः" ले ङिको इकारका स्थानमा और हरिका इकारका स्थानमा अकार भयो, 'हर+औ' भयो "वृद्धिरेचि" ले वृद्धि भयो 'हरौ' सिद्ध भयो ।

**हर्योः** हरि शब्ददेखि सप्तमीको द्विवचन ओस् आयो, 'हरि+ओस्' भयो षष्ठीको द्विवचनमा जस्तै प्रक्रिया भयो 'हर्योः' सिद्ध भयो ।

**हरिषु-** हरि शब्ददेखि सप्तमीको बहुवचन सुप् आयो, 'हरि+सु' भयो । 'हरि+सु' यहाँ सुको सकार इण् प्रत्याहार (हरिको इकार)देखि पर भएको प्रत्ययको अवयव दन्त्य सकार छ र "आदेश प्रत्यययोः" सुका दन्त्य सकारका स्थानमा मूर्धन्य षकार भयो 'हरिषु' ।

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र. | हरिः | हरी | हरयः |
| द्वि. | हरिम् | हरी | हरीन् |
| तृ. | हरिणा | हरिभ्याम् | हरिभिः |
| च. | हरये | हरिभ्याम् | हरिभ्यः |
| प. | हरेः | हरिभ्याम् | हरिभ्यः |
| ष. | हरेः | हर्योः | हरीणाम् |
| स. | हरौ | हर्योः | हरिषु |
| सं. | हे हरे ! | हे हरी ! | हे हरयः ! |

**एवमिति-** यस्तैप्रकारले कवि आदि शब्द पनि जान्नु । अर्थात् ह्रस्व इकारान्त पुंलिङ्ग शब्दका हरिशब्दका जस्तै रूप हुन्छन् । ह्रस्व इकारान्त सखि, पति, कति, द्वि, त्रिशब्दका रूपमा केही फरक पर्ने हुनाले यी शब्दका रूपहरू साध्ने प्रक्रिया अब दिइन्छ ।

**अनङ् साविति-** सखि शब्दरूप अङ्गका स्थानमा र सखि शब्दान्त[३७] अङ्गका स्थानमा अनङ् आदेश होस् संबुद्धिभिन्न सु पर भएमा । यहाँ अनङ्को अङ् इत्संज्ञक छ केवल अन् बाँकी रहन्छ । अतः ङित् हुनाले 'अन्' आदेश "ङिच्च" लगाएर अन्त्य अल्का स्थानमा हुन्छ ।

**अलोन्त्यादिति-** अन्त्य अल्देखि पूर्वको वर्ण उपधासंज्ञक होस् । जहाँकहीं पनि अन्त्यको अल्देखि पूर्वको वर्ण (उपान्त्यवर्ण) उपधासंज्ञक हुन्छ ।

---

३७ सुसखि, किंसखि आदि शब्दका निमित्त सखिशब्दान्त अङ्ग भनिएको हो ।

**१७६. सर्वनामस्थाने चासम्बुद्धौ ६ । ४ । ८ ॥**

नान्तस्योपधाया दीर्घोऽसम्बुद्धौ सर्वनामस्थाने ॥

**१७७. अपृक्त एकाल् प्रत्ययः १ । २ । ४१ ॥**

एकाल् प्रत्ययो यः सोऽपृक्तस.ज्ञः स्यात् ॥

**१७८. हल्ङ्याब्भ्यो दीर्घात्सुतिस्यपृक्तं हल् ६ । १ । ६८ ॥**

हलन्तात्परं दीर्घौ यौ ङ्यापौ तदन्ताञ्च परं सुतिसीत्येतदपृक्तं हल् लुप्यते ॥

**१७९. नलोपः प्रातिपदिकान्तस्य ८ । २ । ७ ॥**

प्रातिपदिकसंज्ञकं यत्पदं तदन्तस्य नस्य लोपः । सखा ॥

**१८०. सख्युरसम्बुद्धौ ७ । १ । ९२ ॥**

सख्युरङ्गात्परं संबुद्धिवर्जं सर्वनामस्थानं णिद्वत्स्यात् ॥

---

**सर्वनामस्थान इति-** नकारान्त अङ्गका उपधाका स्थानमा दीर्घ होस् संबुद्धिभिन्न सर्वनामस्थान पर भएमा ।

**अपृक्त इति-** जो एक अल् रूप प्रत्यय छ त्यो अपृक्त संज्ञक होस् ।

**हल्ङ्याब्भ्य इति-** हलन्तदेखि पर रहेको र जो दीर्घ ङी, जो दीर्घ आप्, तदन्तदेखि पर रहेको 'सु'सम्बन्धी 'ति'सम्बन्धी र 'सि'सम्बन्धी अपृक्तसंज्ञक हल् लुप्त हुन्छ ।

यो सूत्रमा उल्लिखित सु, ति, सि मा सुसम्बन्धी हल् सुप्मा प्रथमाको विभक्तिको एकवचन सुको 'स्'हो । ति सम्बन्धी हल् तिङ्मा प्रथमपुरुषको एकवचन सम्बन्धी 'तिप्'को 'त्'हो । 'सि'सम्बन्धी हल् तिङ्मा मध्यमपुरुषको एकवचन 'सिप्'को 'स्'हो । स्, त्, स्, यी एक अल् रूप हुनाले अपृक्तसंज्ञक हुन्छन् ।

**नलोप इति** (न इति लुप्तषष्ठीकं पदम्) न यो षष्ठीको लोप भएको एकपद हो । अतः 'नः, लोपः' यस्तो पदच्छेद हुन्छ । प्रातिपदिकसंज्ञक जो पद त्यसका अन्तमा रहेको नकारको लोप होस् ।

**सखा-** सखिशब्ददेखि प्रथमाको एकवचन सु आयो, 'सखि+स्' भयो "यस्मात्प्रत्ययविधि" ले 'स'लाई पर राखेर 'सखि'लाई अङ्गसंज्ञा भयो । "अनङ् सौ"ले सखिका स्थानमा अनङ्आदेश भयो, ङकारको "हलन्त्यम्" ले, अनका अकारको "उपदेशे०"ले इत्संज्ञा,र "तस्य लोपः" ले लोप भयो अन् भयो अन् यो आदेश "अलोऽन्त्यस्य" ले अन्त्य अल्का स्थानमा पाएकोमा बाधेर अनेकाल् शित्सर्वस्य" ले सबैका स्थानमा पायो, त्यसलाई बाधेर "ङिच्च" ले अन्त्य अल् सखिको इकारका स्थानमा अन् भयो 'सखन्+स्' भयो अनि स् लाई पर राखेर सखन् यहाँ अन्त्यको अल् नकारदेखि पूर्वको वर्ण सखका अकारको "अलोऽन्त्यात्पूर्व उपधा" ले उपधासंज्ञा भयो, अनि "सुडनपुंसकस्य" ले सुको 'स्'लाई सर्वनामस्थानसंज्ञा भयो अब 'सखन्+स्' यहाँ संबुद्धि भिन्न सर्वनामस्थान पर छ, 'स्' र नकारान्त अङ्गको उपधा सखका अकारका स्थानमा "सर्वनामस्थाने चा संबुद्धौ" ले दीर्घ आकार भयो 'सखान्+स्' भयो, सुको स् लाई "अपृक्त एकाल् प्रत्ययः" ले अपृक्त संज्ञा भएपछि हलन्त अङ्ग 'सखान्' देखि पर रहेको सु संबन्धी अपृक्तसंज्ञक हल् सकारको "हल्ङ्याब्भ्यो०" ले लोप भयो, 'सखान्' भयो । सखान् यसलाई "प्रत्ययलोपे प्रत्ययलक्षणम्" लगाएर "सुप्तिङन्तं पदम्" ले पदसंज्ञा भयो, प्रातिपदिकसंज्ञक पदको अन्तमा रहेको सखान्का नकारको "नलोपः प्रातिपदिकान्तस्य" ले लोप भयो 'सखा' सिद्ध भयो ।

**सख्युरिति-** सखि शब्दरूप अङ्ग र सखि शब्दान्त अङ्गदेखि पर रहेको संबुद्धिभिन्न सर्वनामस्थान णित् जस्तो होस् । णित् प्रत्यय पर भएमा हुने कार्यहरू त्यो पर भएमा पनि होऊन् भन्ने यसको तात्पर्य हो ।

---

१८१. **अचो ञ्णिति ७ । २ । ११५ ॥**

अजन्ताङ्गस्य वृद्धिर्ञिति णिति च परे । सखायौ । सखायः । हे सखे । सखायम् । सखायौ । सखीन् । सख्या । सख्ये ॥

---

**अच इति-** अजन्त अङ्गका स्थानमा वृद्धि होस् ञकारको इत्संज्ञा हुने र णकारको इत्संज्ञा हुने प्रत्यय पर भएमा ।

**सखायौ-** सखि शब्ददेखि प्रथमाको द्विवचन् औ आयो, 'सखि+औ' भयो, औ यसलाई "सुडनपुंसकस्य" ले सर्वनामस्थान संज्ञा भयो, 'सखि+औ' यहाँ सखिशब्दरूप अङ्गदेखि सर्वनामस्थान औ पर छ, र "सख्युरसंबुद्धौ" ले औ को णिद्वद्भाव भयो, 'औ' णित् नभए पनि णित् जस्तै मानियो र अजन्त अङ्ग सखिदेखि णित् प्रत्यय 'औ' पर हुनाले "अचोञ्णिति" ले सखि सबैका स्थानमा वृद्धि पायो । "अलोऽन्त्यस्य" लगाएर इकारका स्थानमा वृद्धि भनेका आ, ऐ, औ, सबै पायो आन्तरतम्याद् इकारका स्थानमा ऐकार भयो 'सखै+औ' भयो "एचोऽयवायावः" ले आय् आदेश भयो 'सखाय्+औ' भयो, यकार गएर औकारमा लाग्यो 'सखायौ' सिद्ध भयो ।

**सखायः-** सखि शब्ददेखि प्रथमाको बहुवचन् जस् आयो, 'सखि+अस्' भयो, अस्लाई सर्वनामस्थान संज्ञा भयो "सख्युरसंवुद्धौ" ले अस्को णिद्वद्भाव भयो । सखिका इकारका स्थानमा पूर्ववत् "अचो ञ्णिति"ले वृद्धि भएर ऐकार भयो, 'सखै+अस्' भयो "एचोऽयवायावः" ले ऐकारका स्थानमा आय् आदेश भयो 'सखाय्+अस्' भयो यकार गएर अस्का अकारमा लाग्यो 'सखायस्' भयो, सकारको रुत्व रेफको विसर्ग भयो 'सखायः' यो रूप सिद्ध भयो ।

**हे सखे-** सखि शब्ददेखि संबोधन अर्थ बुझिँदामा प्रथमाको एकवचन सु आयो, । 'साखि+स्' भयो "ह्रस्वस्य गुणः" ले सखिका इकारका स्थानमा गुण भएर एकार भयो । 'सखे+स् भयो,' "एङ्ह्रस्वात्संवुद्धेः" ले सकारको लोप भयो, हे शब्दको पूर्वप्रयोग भयो, 'हे सखे' सिद्ध भयो । सम्बोधनको द्विवचन र बहुवचनमा पनि प्रथमाको द्विवचन बहुवचनमा जस्तै सर्वनामस्थान संज्ञा णिद्वद्भाव र वृद्धि भएर 'सखायौ', 'सखायः', भयो । हे शब्दको पूर्व प्रयोग भयो, 'हे सखायौ' हे 'सखायः' यी दुई रूप भए ।

**सखायम्-** सखि शब्ददेखि द्वितीयाको एकवचन अम् आयो, 'सखि+अम्' भयो "सुडनपुंसकस्य" ले अम्को सर्वस्थानसंज्ञा र "सख्युरसम्बुद्धौ" ले णिद्वद्भाव भयो, "अमि पूर्वः" ले पाएको पूर्वरूपलाई बाधेर "अचो ञ्णिति"ले सखिका इकारका स्थानमा वृद्धि भएर ऐकार भयो, ऐकारका स्थानमा आय् आदेश भयो, वर्णमेलन भयो, 'सखायम्' सिद्ध भयो ।

**सखायौ-** सखि शब्ददेखि द्वितीयाको द्विवचन् औट् आयो, टकारको इत्संज्ञा, लोप भयो 'सखि+औ' भयो, 'सखि+औ' यहाँ प्रथमा द्विवचनमा जस्तै णिद्वद्भाव, वृद्धि, आय् आदेश भयो 'सखायौ' सिद्ध भयो ।

**सखीन्-** सखि शब्ददेखि द्वितीयाको बहुवचन शस् आयो,, शस् सर्वनामस्थान नहुनाले णिद्वद्भाव वृद्धि भएन, "इको यणचि"लाई बाधेर "प्रथमयोः पूर्वसवर्णः" ले पूर्वसवर्णदीर्घ भयो, 'सखीस्' भयो । "तस्माच्छसो नः पुंसि" ले सकारका स्थानमा नकार भयो, 'सखीन्' सिद्ध भयो ।

**सख्या-** सखि शब्ददेखि तृतीयाको एकवचन टा आयो, 'सखि+आ' भयो, "इको यणचि"ले यण् भयो, 'सख्या' सिद्ध भयो । "शेषो घ्यसखि" मा 'असखि' भनेकोले सखि शब्दलाई घिसंज्ञा हुँदैन । अतः टाका स्थानमा ना आदेश हुँदैन । तृतीयाको द्विवचनमा 'सखिभ्याम्,' बहुवचनमा 'सखिभिः' हुन्छ ।

**सख्ये-** सखि शब्ददेखि चतुर्थीको एकवचन ङे आयो, 'सखि+ए' भयो "इको यणचि" ले

---

**१८२. ख्यत्यात्परस्य ६ । १ । ११२ ॥**
खितिशब्दाभ्यां खीतीशब्दाभ्यां कृतयणादेशाभ्यां परस्य ङसिङसोरत उः । सख्युः ॥
**१८३. औत् ७ । ३ । ११८ ॥**
इतः परस्य ङेरौत् । सख्यौ । शेषं हरिवत् ॥
**१८४. पतिः समास एव १ । ४ । ८ ॥**
घिसंज्ञः ।

---

यण् भयो । 'सख्ये' सिद्ध भयो । द्विवचनमा 'सखिभ्याम्', बहुबचनमा 'सखिभ्यः' हुन्छ ।

**ख्यत्यादिति**- यण् आदेश गरिएका ह्रस्व खिशब्द, ह्रस्व तिशब्द र दीर्घ खी शब्द, दीर्घ ती शब्ददेखि पर रहेका ङसि र ङस्‌सम्बन्धी ह्रस्व अकारका स्थानमा उकार आदेश होस् ।

**सख्युः**- सखि शब्ददेखि पञ्चमीको एकवचन ङसि आयो, 'सखि+अस्' भयो "इको यणचि"ले यण् भयो, 'सख्यस्' भयो । 'सख्यस्' यहाँ यण् आदेश गरिएको ह्रस्व खिशब्ददेखि पर रहेको ङसिसम्बन्धी ह्रस्व अकार यकारोत्तरवर्ती अकार छ र "ख्यत्यात्परस्य"ले त्यसका स्थानमा उकार भयो 'सख्युस्' भयो, रुत्व, विसर्ग भयो 'सख्युः' सिद्ध भयो । पञ्चमीको द्विवचन बहुवचन भ्याम्, भ्यस्, मा 'सखिभ्याम्', 'सखिभ्यः' हुन्छ ।

**सख्युः**- सखि शब्ददेखि षष्ठीको एकवचन ङस् आयो, 'सखि+अस्' भयो, यण् भयो, 'सख्यस्' भयो, ङसिमा जस्तै यहाँ पनि "ख्यत्यात्परस्य"ले उत्व भयो, रुत्व, विसर्ग भयो 'सख्युः' सिद्ध भयो ।

**सख्योः**- षष्ठीको द्विवचनमा 'सखि+ओस्' यहाँ यण् भयो, सकारको रुत्व, विसर्ग भयो 'सख्योः' सिद्ध भयो ।

**सखीनाम्**- सखि शब्ददेखि षष्ठीको बहुवचन आम् आयो, 'सखि+आम्' भयो 'सखि+आम्' यहाँ "ह्रस्वनद्यापो नुट्"ले नुट् आगम भयो 'सखि+नाम्' "नामि" ले दीर्घ भयो 'सखीनाम्' ।

**औदिति**- ह्रस्व इकारदेखि पर रहेका ङि का स्थानमा औकार आदेश होस् ।

**सख्यौ**- सखि शब्ददेखि सप्तमीको एकवचन, ङि आयो, 'सखि+इ' भयो "अकः सवर्णे दीर्घः" ले दीर्घ पायो त्यसलाई बाधेर "औत्"ले ङिका स्थानमा औकार भयो 'सखि+औ' भयो "इको यणचि"ले यण् भयो 'सख्यौ' सिद्ध भयो ।

**सख्योः**- सखि शब्ददेखि सप्तमीको द्विवचन ओस् आयो, 'सखि+ओस्' भयो, यण् भयो, सकारको रुत्व, विसर्ग भयो, "सख्योः" सिद्ध भयो ।

**सखिषु**- सखि शब्ददेखि सप्तमीको बहुवचन सुप् आयो, पकारको इत्संज्ञा, लोप, भयो 'सखि+सु' यहाँ "आदेशप्रत्यययोः"ले षत्व भयो 'सखिषु' सिद्ध भयो ।

**शेषं हरिवत्**- बाँकी रहेका रूप हरि शब्दका जस्तै हुन्छन् । मूलमा लेखिएका रूपबाहेक अरू हरि शब्दका जस्ता हुन्छन् भनेको हो । टीकामा हरि शब्दका सबै रूप संक्षिप्तमा प्रक्रिया देखाएर सिद्ध गरिएका छन् र सखि शब्दका पनि सबै रूपहरू यहीं टीकामा सिद्ध गरेर देखाइएका छन् ।

**पतिरिति**- पति शब्द समासमा मात्र घिसंज्ञक होस् । अन्यत्र नहोस् ।

घिसंज्ञाका चार कार्य छन्- (१) टाका स्थानमा 'आङो नाऽस्त्रियाम्'ले ना आदेश, (२) ङे, ङसि र ङस्‌मा "घेर्ङिति" ले गुण, (३) "ङि" मा "अच्च घेः"ले ङिका स्थानमा ओकार र प्रकृतिको इकार उकारका स्थानमा अकार ।

समस्त पतिशब्दको मात्र घिसंज्ञा हुने र केवल पति शब्दको घिसंज्ञा नहुने भएकोले केवल पति शब्दमा यी कार्य हुँदैनन् । अतः टा, ङसि, ङस्, र ङि, मा हरि शब्दका भन्दा फरक रूप हुन्छन् । ती रूपहरू यहाँ सिद्ध गरेर देखाइन्छ ।

---

पत्या । पत्ये । पत्युः २ । पत्यौ । शेषं हरिवत् । समासे तु भूपतये ।

केवल पतिशब्दलाई "शेषोघ्यसखि" ले घिसंज्ञा पाएकोमा "पतिः समास एव" यस सूत्रले घिसंज्ञा निषेध हुन्छ । समासमा घिसंज्ञा हुन्छ ।

**पत्या-** पतिशब्ददेखि तृतीयाको एकवचन टा आयो, 'पति+आ' भयो, पतिशब्दलाई 'शेषो घ्यसखि' ले घिसंज्ञा पाएकोमा "पतिः समास एव" यो सूत्रले पतिशब्द समासमा मात्र घिसंज्ञक हुन्छ, अन्यत्र हुँदैन भनेकोले यहाँ समास छैन र 'घि'संज्ञा भएन, घिसंज्ञा नभएकोले 'ना'आदेश भएन "इको यणचि" ले यण् भयो 'पत्या' सिद्ध भयो ।

**पत्ये-** पतिशब्ददेखि चतुर्थीको एकवचन ङे आयो, 'पति+ए' भयो "पतिः समास एव"ले घिसंज्ञा निषेध भएकोले "घेर्ङिति"ले गुण भएन, यण् भयो, 'पत्ये' ।

**पत्युः-** पतिशब्ददेखि पञ्चमीको एकवचन ङसि आयो, 'पति+अस्' भयो घिसंज्ञा निषेध भएकोले गुण भएन, यण् भयो, 'पत्यस्' भयो । "ख्यत्यात्परस्य"ले 'पत्यस्' यहाँ 'य'देखि पर रहेका अकारका स्थानमा उकार भयो रुत्व, विसर्ग भयो 'पत्युः' सिद्ध भयो ।

**पत्युः-** पतिशब्ददेखि षष्ठीको एक वचन ङस् आयो, 'पति+अस्' भयो ङसिमा जस्तै प्रक्रिया भयो र 'पत्युः' सिद्ध भयो ।

**पत्यौ-** पति शब्ददेखि सप्तमीको एकवचन ङि आयो, घिसंज्ञा निषेध भएकोले "अच्च घेः" लागेन, "औत्"ले ङि स्थानमा औकार भयो, "इको यणचि"ले यण् भयो, 'पत्यौ' सिद्ध भयो ।

बाँकी रहेका स्थलमा पतिशब्द हरिशब्द जस्तै हुन्छ । पति शब्दका रूप-

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| प्र. | पतिः | पती | पतयः | द्वि. | पतिम् | पती | पतीन्, |
| तृ. | पत्या | पतिभ्याम् | पतिभिः | च. | पत्ये | पतिभ्याम् | पतिभ्यः |
| प. | पत्युः | पतिभ्याम् | पतिभ्यः | ष. | पत्युः | पत्योः | पतीनाम् |
| स. | पत्यौ | पत्योः | पतिषु | सं | हे पते ! | हेपती ! | हेपतयः ! |

**समासे त्विति-** समासमा त - 'भूपतये' यस्तो रूप बन्दछ ।

**भुवः पतिः** यस्तो विग्रहमा 'भू ङस् पति सु' यस्तो स्थितिमा षष्ठी समास विभक्तिको लुक् भएर 'भूपति' शब्द बन्यो । भूपति शब्दको "शेषो घ्यसखि" ले घिसंज्ञा पाएकोमा "पतिःसमास एव" ले पतिशब्द समासमा मात्र घिसंज्ञक हुन्छ भनेकोले यहाँ समास छ र घिसंज्ञक भयो । घिसंज्ञा भएपछि घिसंज्ञा निमित्तक कार्य 'ना'आदेश "घेर्ङिति" ले गुण "अच्च घेः" ले ङिका स्थानमा औकार अङ्गका अन्त्य अल्का स्थानमा अकार यी सबै कार्य हुने भए । अतः हरि शब्दका जस्तै रूप हुन्छन् । यहाँ उदाहरण 'भूपतिना' शुरूको रूप नदिएर 'भूपतये'यो रूप 'भूपतये स्वाहा'[३८] यो मन्त्रमा लोकप्रसिद्ध प्रयोग देखाउने अभिप्रायले दिइएको हो । भूपति शब्दका रूपहरू-

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| प्र. | भूपतिः | भूपती | भूपतयः | द्वि. | भूपतिम् | भूपती | भूपतीन् |
| तृ. | भूपतिना | भूपतिभ्याम् | भूपतिभिः | च. | भूपतये | भूपतिभ्याम् | भूपतिभ्यः |
| प. | भूपतेः | भूपतिभ्याम् | भूपतिभ्यः | ष. | भूपतेः | भूपत्योः | भूपतीनाम् |
| स. | भूपतौ | भूपत्योः | भूपतिषु | सं | हे भूपते ! | हे भूपती ! | हे भूपतयः ! |

३८ 'भूपतये स्वाहा' यो भोजन गर्ने वेलामा बलि दिने मन्त्र हुनाले यो प्रसिद्ध उदाहरण छ ।

कतिशब्दो नित्यं बहुवचनान्तः ॥

**१८५. बहुगणवतुडति संख्या** १ । १ । २३ ॥

**१८६. डति च** १ । १ । २५ ॥

डत्यन्ता संख्या षट्संज्ञा स्यात् ॥

**१८७. षड्भ्यो लुक्** ७ । १ । २२ ॥

जश्शसोः ॥

**१८८. प्रत्ययस्य लुक्श्लुलुपः** १ । १ । ६१ ॥

लुक्श्लुलुप्शब्दैः कृतं प्रत्ययादर्शनं क्रमात्तत्तत्संज्ञं स्यात् ॥

**१८९. प्रत्ययलोपे प्रत्ययलक्षणम्** १ । १ । ६३ ॥

प्रत्यये लुप्ते तदाश्रितं कार्यं स्यात् । इति जसि चेति गुणे प्राप्ते ॥

**१९०. न लुमताऽङ्गस्य** १ । १ । ६३ ॥।

लुमता शब्देन लुप्ते तन्निमित्तमङ्गकार्यं न स्यात् । कति २ । कतिभिः । कतिभ्यः २ ।

---

यस्तै प्रकारले सभापति, सेनापति, गणपति, पशुपति, दिक्पति, अश्वपति, गोपति, धनपति, आदि शब्दका रूप हुन्छन् ।

**कतिशब्दइति-** कति शब्द नित्य बहुवचनान्त छ ।

**बह्विवति-** बहु शब्द, गण शब्द, वतु प्रत्ययान्त शब्द, डति प्रत्ययान्त शब्द, संख्यासंज्ञक होऊन् ।

**डति चेति-** डति प्रत्यय अन्तमा हुने सङ्ख्यावाचक शब्द षट्संज्ञक होऊन् ।

**षड्भ्य इति-** षट्संज्ञक शब्ददेखि पर रहेका जस् र शस्को लुक् होस् ।

**प्रत्ययस्येति-** लुक्, श्लु,र लुप् शब्दहरूद्वारा गरिएको प्रत्ययको अदर्शन क्रमैले लुक्, श्लु,र लुप् संज्ञक होस् ।

**प्रत्ययलोप इति-** प्रत्यय लुप्त भए पनि त्यसलाई आश्रय मानेर हुने कार्य होस् ।

**इतीति-** यो सूत्र लाएर "जसि च"ले गुण पाएमा-

**न लुमतेति-** लुक् श्लु लुप् यी तीन शब्द लुमान् कहिन्छन् । लुमान् शब्दले प्रत्ययको लोप गरिएमा त्यसलाई आश्रय मानेर हुने अङ्ग कार्य नहोस् ।

**कति-** कति शब्दलाई डति प्रत्ययान्त शब्द हुनाले "बहुगणवतुडति सङ्ख्या" ले सङ्ख्या संज्ञा भयो "डति च" ले षट्संज्ञा पनि भयो, भएपछि कति शब्ददेखि प्रथमाको बहुवचन जस् आयो, 'कति+अस्' भयो "षड्भ्यो लुक्"ले अस्को लुक् भयो लुक् भनेको के त ? "प्रत्ययस्य लुक्-श्लुलुपः" ले लुक् श्लु र लुप् शब्दले गरेको प्रत्ययको अदर्शन लुक्, श्लु, लुप् संज्ञक हुन्छ भनेकोले यहाँ लुक् शब्दद्वारा प्रत्ययको लोप भयो । अनि "प्रत्ययलोपे प्रत्ययलक्षणम्"ले प्रत्ययलोप भए पनि त्यसलाई आश्रय मानेर हुने कार्य होस् भनेकोले कतिका इकारका स्थानमा "जसि च" ले गुण पायो, पाएमा "न लुमताङ्गस्य" ले लुमान् शब्द अर्थात् लयुक्त शब्दले लोप गरेमा त्यसलाई आश्रय मानेर हुने अङ्ग कार्य नहोस् भनेकोले गुण भएन 'कति' सिद्ध भयो ।

**कति-** कति शब्दलाई षट् संज्ञा भएकै छ, द्वितीयाको बहुवचन शस् आयो, 'कति+अस्' "षड्भ्यो लुक्"ले अस्को लुक् भयो, "प्रत्ययलोपे०" लगाएर गुण पाएको पूर्ववत् निषेध भयो 'कति' सिद्ध भयो ।

**कतिभिः-** कति शब्ददेखि तृतीयाको बहुवचन भिस् आयो, रुत्व, विसर्ग भयो 'कतिभिः' ।

**कतिभ्यः-** कति शब्ददेखि चतुर्थीको बहुवचन भ्यस् आयो, रुत्व, विसर्ग भयो 'कतिभ्यः' ।

**कतिभ्यः-** पञ्चमीका बहुवचन भ्यसमा पनि चतुर्थी बहुवचनमा जस्तै प्रक्रिया भयो ।

---

कतीनाम् । कतिषु । युस्मदस्मत्षट्संज्ञकास्त्रिषु सरूपाः ॥ त्रिशब्दो नित्यं बहुवचनान्तः । त्रयः । त्रीन् । त्रिभिः । त्रिभ्यः २ ॥

**१९१. त्रेस्त्रयः ७ । १ । ५३ ॥**

त्रिशब्दस्य त्रयादेशः स्यादामि । त्रयाणाम् । त्रिषु । गौणत्वेऽपि प्रियत्रयाणाम् ॥

---

'कतिभ्यः' सिद्ध भयो ।

**कतीनाम्-** कति शब्ददेखि षष्ठीको बहुवचन आम् आयो, आम्को "ह्रस्वनद्यापो नुट्"ले नुट् आगम भयो, 'कतिनाम्' भयो, कतिका इकारका स्थानमा "नामि"ले दीर्घ भयो, 'कतीनाम्' ।

**कतिषु-** कति शब्ददेखि सप्तमीको बहुवचन सुप् आयो, 'कतिसु' "आदेशप्रत्यययोः"ले सुका सकारका स्थानमा षकार भयो 'कतिषु' सिद्ध भयो ।

**युष्मदस्मदिति-** यष्मद् शब्द, अस्मद् शब्द, षट्संज्ञक शब्द (डत्यन्त संख्यावाचक शब्द कति, नान्तषट् संज्ञक शब्द पञ्चन्, सप्तन् अष्टन् आदि, षान्त षट्संज्ञक शब्द षष् शब्द) यी शब्दहरू तीनै लिङ्गमा समान रूप भएका हुन्छन् । अमरकोषमा "षट्संज्ञकास्त्रिषु समा युष्मदस्मत्तिङव्ययम्" भनेर तिङ् र अव्ययको समेत परिगणना गरेको छ ।

"बहुगणवतुडति०" यस सूत्रमा डत्यन्त संख्या कति मात्र षट्संज्ञक शब्द हो । डत्यन्त कति शब्दलाई "डति च" ले षट् संज्ञा हुन्छ । बहु, शब्द, गण+शब्द र वतु, प्रत्ययान्त 'तावत्' आदि यी शब्द षट्संज्ञक होइनन् । नान्त संख्या पञ्चन् आदि शब्द र षान्त संख्या षष् शब्द षट्संज्ञक हुन् । नान्त र षान्त संख्यालाई "ष्णान्ताः षट्" ले षट्संज्ञा हुन्छ ।

**त्रिशब्द इति-** त्रि शब्द नित्यबहुवचनान्त छ ।

**त्रयः-** त्रि शब्ददेखि जस् आयो 'त्रि+अस्' भयो, "जसि च"ले गुण भयो, रुत्व विसर्ग भयो । 'त्रयः' रूप सिद्ध भयो ।

**त्रीन्-** त्रि शब्ददेखि शस् आयो, 'त्रि+अस्' भयो "प्रथमयोः पूर्वसवर्णः" ले पूर्वसवर्णदीर्घ भयो, "तस्माच्छसो नः०" ले सकारका स्थानमा नकार भयो 'त्रीन्' सिद्ध भयो ।

**त्रिभिः-**त्रि शब्ददेखि तृतीयाको बहुवचन, भिस् आयो, रुत्व, विसर्ग, 'त्रिभिः' सिद्ध भयो ।

**त्रिभ्यः-** त्रि शब्ददेखि चतुर्थीको बहुवचन भ्यस् आयो, रुत्व, विसर्ग भयो 'त्रिभ्यः' सिद्ध भयो । पञ्चमी बहुवचन भ्यस्मा पनि यसै गरी 'त्रिभ्यः' हुन्छ ।

**त्रेरिति-** त्रि शब्दका स्थानमा त्रय आदेश होस् आम् पर भएमा ।

**त्रयाणाम्-** त्रि शब्ददेखि षष्ठीको बहुवचन आम् आयो, 'त्रि+आम्' भयो, "त्रेस्त्रयः" ले त्रिका स्थानमा त्रय आदेश भयो, "ह्रस्वनद्यापो नुट्" ले आम्को नुट्आगम भयो, "नामि"ले दीर्घ भयो, णत्व भयो, 'त्रयाणाम्' सिद्ध भयो ।

**त्रिषु-** त्रि शब्ददेखि सप्तमीको बहुवचन सुप् आयो, 'त्रि+सु' भयो, "आदेशप्रत्यययोः"ले सकारका स्थानमा षकार भयो, 'त्रिषु' सिद्ध भयो ।

**गौणत्वेऽपीति-** गौणत्वमा पनि "प्रियत्रयाणाम्" यस्तो रूप हुन्छ अर्थात् त्रिशब्दका स्थानमा त्रय आदेश हुन्छ । "इतरविशेषणतया स्वार्थोपस्थापकत्वमुपसर्जनत्वं वा गौणत्वम्" प्रियत्रि शब्दमा- प्रियाः त्रयो यस्य= प्यारा छन् तीन जसका, यो विग्रहमा बहुव्रीहिसमास भएको छ । अन्य पदार्थ प्रधान हुनाले त्रि शब्दमा गौणत्व छ । अर्थात् त्रि शब्दले अर्काको विशेषण भएर आफ्नो अर्थ उपस्थापन गरेको हुनाले त्रि शब्द गौण छ । गौण भए पनि त्रि शब्दका स्थानमा त्रय आदेश हुन्छ । अङ्गाधिकार हुनाले "पदाङ्गाधिकारे तस्य तदन्तस्य च" यो परिभाषा लाग्छ भन्ने

१९२. **त्यदादीनामः** ७ । २ । १०२ ।

एषामकारो विभक्तौ । **वा**.(द्विपर्यन्तानामेवेष्टिः) द्वौ २ । द्वाभ्याम् ३ । द्वयोः २ ॥ पाति लोकमिति पपीः सूर्यः ॥

(१६१ "**दीर्घाज्जसि च**") पप्यौ २ । पप्यः । ६ । १ । १०५ ॥

---

तात्पर्य हो । 'प्रियत्रि' शब्दका रूप हरि शब्दका जस्तै हुन्छन् ।

**द्विशब्द इति-** द्वि शब्द नित्य द्विवचनान्त छ ।

**त्यदादीनामिति-** त्यदादि शब्दका अन्त्य अल्का स्थानमा अकार आदेश होस् विभक्ति पर भएमा ।

(**वा**.) **द्विपर्यन्तेति-** द्वि शब्दसम्मका त्यदादिका स्थानमा मात्र अकार आदेश इष्ट छ ।

द्वि शब्ददेखि परका युष्मद्, अस्मद्, भवत्, किम्, शब्दमा यो सूत्र "त्यदादीनामः" लाग्दैन ।

**द्वौ-** द्विशब्ददेखि प्रथमाको द्विवचन औ आयो, 'द्वि+औ' भएपछि "द्विपर्यन्तानामेवेष्टिः" यो वार्तिकले द्वि शब्दको सम्मका त्यदादि शब्दका स्थानमा अकार आदेश इष्ट छ भनेकोले यहाँ द्विशब्दसम्मको त्यदादि शब्द छ 'द्वि', विभक्ति पर छ 'औ', र द्विका इकारका स्थानमा "त्यदादीनामः" ले अकार भयो, 'द्व+औ' भयो । "नादिचि" ले पूर्वसवर्णदीर्घको निषेध भएपछि "वृद्धिरेचि" ले वृद्धि भयो, 'द्वौ' सिद्ध भयो ।

**द्वितीयाको-** द्विवचनमा पनि औट्का टकारको इत्संज्ञा र लोप भएपछि प्रथमाको द्विवचनमा भै प्रक्रिया भयो 'द्वौ' सिद्ध भयो ।

**द्वाभ्याम् ३-** द्वि शब्ददेखि तृतीयाको द्विवचन भ्याम् आयो, 'द्वि+भ्याम्' भयो, "त्यदादीनामः"ले द्विका इकारका स्थानमा अकार भयो, द्वका अकारका स्थानमा "सुपि च" ले दीर्घ भयो, 'द्वाभ्याम्' सिद्ध भयो । चतुर्थीको द्विवचनमा र पञ्चमीको द्विवचनमा पनि पूर्ववत् अत्व भयो, दीर्घ भयो, 'द्वाभ्याम्', 'द्वाभ्याम्' यही रूप भयो ।

**द्वयोः२-** द्वि शव्ददेखि षष्ठीको द्विवचन ओस् आयो, 'द्वि+ओस्' भयो "त्यदादीनामः" ले द्विका इकारका स्थानमा अकार भयो, अकारका स्थानमा "ओसि च" ले एकार भयो, 'द्वे+ओस्' भयो, अय् आदेश र रुत्व, विसर्ग भयो, 'द्वयोः' सिद्ध भयो । सप्तमीको द्विवचनमा पनि षष्ठीको द्विवचनमा जस्तै प्रक्रिया भएर 'द्वयोः' यही रूप सिद्ध भयो ।

दीर्घ ईकारान्तशब्दहरू–

**पाति लोकमिति-** पाति लोकम् (लोकलाई रक्षा गर्छन्) यो विग्रहमा पा धातुदेखि "यापोः किद् द्वे च" यो औणादिक सूत्रले ई प्रत्यय, द्वित्व अनि आकारलोप, अभ्यासको ह्रस्व, भएर पपी शब्द बन्दछ । पपी भनेका सूर्य हुन् ।

**पपीः-** पपी शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'पपी+स्' भयो सकारका स्थानमा रुत्व विसर्ग भयो, 'पपीः' सिद्ध भयो ।

**पप्यौ-** पपी शब्ददेखि प्रथमाको द्विवचन औ आयो, 'पपी+औ' भयो "प्रथमयोःपूर्वसवर्णः"ले पाएको पूर्वसवर्णदीर्घको "दीर्घाज्जसि च" ले निषेध, भयो "इको यणचि" ले यण् भयो 'पप्यौ' सिद्ध भयो । द्वितीयाको द्विवचनमा पनि यही प्रक्रियाद्वारा 'पप्यौ' सिद्ध हुन्छ ।

**पप्यः-** पपी शब्ददेखि प्रथमाको बहुवचन जस् आयो, 'पपी+अस्' भयो । 'पपी+अस्' यहाँ "प्रथमयोः पूर्वसवर्णः" ले पाएको पूर्वसवर्णदीर्घलाई "दीर्घाज्जसि च" ले निषेध गऱ्यो, "इको यणचि"ले यण् भयो, 'पप्यस्' भयो, रुत्व, विसर्ग भयो, 'पप्यः' सिद्ध भयो ।

हे पपीः । पपीम् । पपीन् । पप्या । पपीभ्याम् ३ । पपीभिः । पप्ये । पपीभ्यः २ । पप्यः २ । पप्योः २ । दीर्घत्वान्न नुट्, पप्याम् । ङौ तु सवर्णदीर्घः, पपी । पप्योः पपीषु । एवं वातप्रम्यादयः ॥ बह्व्यः श्रेयस्यो यस्य स बहुश्रेयसी ॥

---

**पपीम्**- पपी शब्ददेखि द्वितीयाको द्विवचन अम् आयो, "प्रथमयोः पूर्वसवर्णः" लाई बाधेर "अमि पूर्वः"ले पूर्वरूप भयो 'पपीम्' सिद्ध भयो ।

**पपीन्**- पपी शब्ददेखि द्वितीयाका बहुवचन शस् आयो, 'पपी+अस्' भयो, "इको यणचि" लाई बाधेर "प्रथमयोः०"ले पूर्वसवर्णदीर्घ भयो, 'पपीस्' "तस्माच्छसो नः पुंसि" ले सकारका स्थानमा नकार भयो, 'पपीन्', सिद्ध भयो । जस् पर भएमा र इच् पर भएमा मात्र 'दीर्घाज्जसि च' ले पूर्वसवर्णदीर्घ निषेध हुन्छ शस्मा हुँदैन ।

**पप्या**- पपी शब्ददेखि तृतीयाको एकवचन टा आयो, 'पपी+आ' भयो "इको यणचि"ले यण् भयो 'पप्या' सिद्ध भयो ।

**पपीभ्याम्३**- पपी शब्ददेखि तृतीयाको द्विवचन भ्याम् आयो, 'पपीभ्याम्' सिद्ध भयो । यहाँ अरू विशेष कार्य केही हुँदैन । चतुर्थी र पञ्चमीको द्विवचनमा पनि 'पपीभ्याम्', यही रूप हुन्छ ।

**पपीभिः**- पपी शब्ददेखि तृतीयाको बहुवचन भिस् आयो, 'पपी+भिस्' भयो, रुत्व, विसर्ग भयो, 'पपीभिः' सिद्ध भयो ।

**पप्ये** - पपी शब्ददेखि चतुर्थीको एकवचन ङे आयो, 'पपी+ए' भयो यण् भयो, 'पप्ये' सिद्ध भयो ।

**पपीभ्यः२** पपी शब्ददेखि चतुर्थीको बहुवचन भ्यस् आयो, 'पपी+भ्यस्' भयो, सकारको रुत्व विसर्ग भयो, 'पपीभ्यः' सिद्ध भयो । पञ्चमीको बहुवचनमा पनि 'पपीभ्यः' यही प्रक्रियाद्वारा सिद्ध भयो ।

**पप्यः२** पपीशब्ददेखि पञ्चमीको एकवचन ङसि आयो, 'पपी+अस्' भयो, यण् भयो, 'पप्यस्', सकारका स्थानमा रुत्व विसर्ग भयो, 'पप्यः' सिद्ध भयो । षष्ठीको एकवचनमा यही प्रक्रिया भएर 'पप्यः' हुन्छ ।

**पप्योः२**- पपी शब्ददेखि षष्ठीको द्विवचन ओस् आयो, 'पपी+ओस्' भयो, यण् भयो, सकारको रुत्व विसर्ग भयो, 'पप्योः' सिद्ध भयो । सप्तमीको द्विवचनमा पनि यही प्रक्रिया भएर 'पप्योः' सिद्ध हुन्छ ।

**पप्याम्**- पपी शब्ददेखि षष्ठीको बहुवचन आम् आयो, 'पपी+आम्' भयो । पपी शब्द दीर्घ हुनाले "ह्रस्वनद्यापः०" ले नुट् भएन, यण् भयो, 'पप्याम्' सिद्ध भयो ।

**पपी**- पपी शब्ददेखि सप्तमीको एकवचन ङि आयो,, 'पपी+इ' भयो "अकः सवर्णे दीर्घः" ले दीर्घ भयो 'पपी' सिद्ध भयो ।

**पपीषु**- पपी शब्ददेखि सप्तमीको बहुवचन सुप् आयो, 'पपी+सु' भयो "आदेशप्रत्यययोः" ले षत्व भयो, 'पपीषु' सिद्ध भयो ।

**एवमिति**- यस्तै प्रकारले वातप्रमी आदि शब्द पनि जान्नु ।

**बह्व्य इति**- बह्व्यः श्रेयस्यो यस्य (धेरै छन् कल्याणी स्त्रीहरू जसका) यो विग्रहमा बहुव्रीहि समास भएर 'बहुश्रेयसी' शब्द बन्दछ । बहुश्रेयसी शब्दले धेरै असल स्त्री हुने व्यक्तिलाई कहन्छ ।

**बहुश्रेयसी**-बहुश्रेयसी शब्ददेखि प्रथमाको एकवचन सु आयो,, 'बहुश्रेयसी+स्' भयो "अपृक्त एकाल् प्रत्ययः" ले 'स्' यसलाई अपृक्त संज्ञा भयो, "हल्ङयाब्भ्यो दीर्घात्०" ले सकारको लोप भयो 'बहुश्रेयसी' सिद्ध भयो ।

**बहुश्रेयस्यौ**- बहुश्रेयसी शब्ददेखि प्रथमाको द्विवचन औ आयो,, 'बहुश्रेयसी+औ' भयो, "इको यणचि"ले यण् पायो, त्यसलाई बाधेर "प्रथमयोः०" ले पूर्वसवर्णदीर्घ पाएको "दीर्घाज्जसि

**१९३. यू स्त्र्याख्यौ नदी** १ । ४ । ३ ॥

ईदूदन्तौ नित्यस्त्रीलिङ्गौ नदीसंज्ञौ स्तः । **वा.**(प्रथमलिङ्गग्रहणं च) । पूर्वं स्त्र्याख्यस्योपसर्जनत्वेऽपि नदीत्वं वक्तव्यमित्यर्थः ॥

**१९४. अम्बार्थनद्योर्ह्रस्वः** ७ । ३ । १०७ ॥

सम्बुद्धौ । हे बहुश्रेयसि ॥

---

च"ले निषेध भयो, "बाधकाभावे०" लगाएर पुनः "इको यणचि"ले यण् भयो, 'बहुश्रेयस्यौ' सिद्ध भयो । औट्मा पनि यही प्रक्रियाद्वारा यही रूप बन्दछ ।

**बहुश्रेयस्यः**- बहुश्रेयसी शब्ददेखि प्रथमा बहुवचन जस् आयो, 'बहुश्रेयसी+अस्' भयो, यहाँ "इको यणचि"ले यण् पायो, त्यसलाई बाधेर 'प्रथमयोः०' ले पूर्वसवर्णदीर्घ पाएको "दीर्घाज्जसि च"ले निषेध भयो, "बाधकाभावे०" लगाएर पुनः "इको यणचि"ले यण् भयो, 'बहुश्रेयस्यस्' भयो रुत्व विसर्ग भयो, 'बहुश्रेयस्यः' सिद्ध भयो ।

**यू स्त्र्याख्याविति**- नित्य स्त्रीलिङ्गमा वर्तमान दीर्घ ईकारान्त दीर्घ ऊकारान्त शब्द नदीसंज्ञक होऊन् । यो सूत्रले पार्वती, गौरी, वधू, श्री, लक्ष्मी, श्वश्रू आदि शब्दको नदी संज्ञा हुन्छ । अर्को लिङ्गमा नरहने खाली स्त्रीलिङ्गमा रहने शब्दलाई नित्यस्त्रीलिङ्ग भनिन्छ ।

**(वा.) प्रथमेति**- समासआदि वृत्ति भन्दा पहिले स्त्रीलिङ्गमा वर्तमान शब्दको उपसर्जनत्व भएमा पनि नदीसंज्ञा होस् भन्नु यो अर्थ हो ।

नदीसंज्ञाको फल-सम्बुद्धिमा ह्रस्व, ङित् विभक्तिको आट् आगम, आम्को नुट् आगम, ङिका स्थानमा आम् आदेश यी चार कार्य हुन् ।

**अम्बार्थेति**- अम्बार्थक शब्द र नदीसंज्ञक शब्द अन्तमा हुने शब्दको पनि ह्रस्व होस् संबुद्धि पर भएमा ।

**हे बहुश्रेयसि**- नित्य स्त्रीलिङ्गमा वर्तमान दीर्घ ईकारान्त शब्द हुनाले श्रेयसी शब्दलाई "यू स्त्र्याख्यौ नदी"ले नदीसंज्ञा भयो । अब यहाँ बहुश्रेयसी शब्द पुलिङ्गमा रहने भए पनि बहुश्रेयसीशब्द घटक श्रेयसीशब्द समासभन्दा पूर्व नित्यस्त्रीलिङ्गी हुनाले "प्रथमलिङ्गग्रहणं च" यस वार्तिकले नदीसंज्ञा भयो । अनि बहुश्रेयसी शब्ददेखि संबोधन अर्थमा प्रथमाको एकवचन सु आयो,, 'बहुश्रेयसी+सु' भयो, "एकवचनं संबुद्धिः"ले सुको संबुद्धि संज्ञा भयो अनुबन्ध लोप भयो, 'बहुश्रेयसी+स्' भयो । "अम्बार्थनद्योर्ह्रस्वः" ले "अलोऽन्त्यस्य" लगाएर 'बहुश्रेयसी' का दीर्घ ईकारका स्थानमा ह्रस्व इकार भयो, "एङ्ह्रस्वात्संबुद्धेः" ले सुका सकारको लोप भयो, हे शब्दको पूर्व प्रयोग भयो 'हे बहुश्रेयसि !' ।

संबोधन अर्थको औ र जस्मा पनि सामान्य औ जस्मा जस्तै प्रक्रिया भएर 'बहुश्रेयस्यौ', 'बहुश्रेयस्यः' भयो, हे शब्दको पूर्वप्रयोग भयो 'हे बहुश्रेयस्यौ', 'हे बहुश्रेयस्यः' सिद्ध भयो ।

**बहुश्रेयसीम्**- बहुश्रेयसी शब्ददेखि अम् आयो, 'बहुश्रेयसी+अम्' भयो, यहाँ "इको यणचि"ले यण् पायो, त्यसलाई बाधेर "अमि पूर्वः"ले पूर्वरूप भयो, 'बहुश्रेयसीम्', औट्मा पनि औमा जस्तै प्रक्रिया भएर 'बहुश्रेयस्यौ' हुन्छ ।

**बहुश्रेयसीन्**- बहुश्रेयसी शब्ददेखि द्वितीयाको बहुवचन शस् आयो, 'बहुश्रेयसी+अस्' भयो । यहाँ "इको यणचि"ले यण् पायो, त्यसलाई बाधेर "प्रथमयोः०" ले पूर्वसवर्णदीर्घ भयो 'बहुश्रेयसीस्' भयो, "तस्माच्छसो:०"ले सकारका स्थानमा नकार भयो, 'बहुश्रेयसीन्' सिद्ध भयो ।

**१९५. आण्नद्याः ७ । ३ । ११२ ॥**

नद्यान्तात्परेषां ङितामाडागमः ॥

**१९६. आटश्च ६ । १ । ९० ॥**

आटोऽचि परे वृद्धिरेकादेशः । बहुश्रेयस्यै । बहुश्रेयस्याः । बहुश्रेयसीनाम् ॥

**१९७. ङेराम्नद्याम्नीभ्यः ७ । ३ । ११६ ॥**

नद्यन्तादाबन्तान्नीशब्दाञ्च परस्य ङेराम् । बहुश्रेयस्याम् । शेषं पपीवत् ॥

---

तृतीयाको एकवचन टामा "इको यणचि"ले यण् हुन्छ । भ्याम्मा विशेष कार्य छैन । भिस्मा सकारको रुत्व, विसर्ग हुन्छ ।

**आडिति-** नद्यन्त शब्ददेखि पर रहेका ङित्विभक्तिको आट् आगम होस् ।

**आटश्च-**आट् आगमदेखि अच् पर भएमा पूर्व र परका स्थानमा वृद्धिसंज्ञक एकादेश होस् ।

**बहुश्रेयस्यै-** बहुश्रेयसी-घटक श्रेयसी शब्दलाई पूर्ववत् "प्रथमलिङ्गग्रहणं च" ले नदीसंज्ञा भएपछि बहुश्रेयसी शब्ददेखि चतुर्थीको एकवचन ङे आयो, 'बहुश्रेयसी+ए' भयो, नद्यन्त बहुश्रेयसी शब्ददेखि पर रहेको ङित्विभक्ति ङे संबन्धी एको "आण्नद्याः"ले आट्आगम भयो, अनुवन्धलोप भयो, टित्त्वात् 'ए'को आदिपट्टि आ भयो 'बहुश्रेयसी+आ+ए' भयो, यहाँ 'आ' र 'ए' का स्थानमा "आटश्च" ले वृद्धि हुँदा ऐकार भयो, 'बहुश्रेयसी+ऐ' भयो, "इको यणचि"ले यण् भयो 'बहुश्रेयस्यै' सिद्ध भयो ।

**बहुश्रेयस्याः** बहुश्रेयसी शब्ददेखि पञ्चमीको एकवचन ङसि आयो, । 'बहुश्रेयसी+अस्' भयो । अस् यो ङित् विभक्ति हुनाले "आण्नद्याः"ले अस्को 'आट्'आगम भयो, 'बहुश्रेयसी+आ+अस्' भयो, "आटश्च" ले वृद्धि भयो "इको यणचि" ले यण् भयो, 'बहुश्रेयस्यास्' भयो । अन्तिम सकारको रुत्व, विसर्ग भयो, 'बहुश्रेयस्याः' सिद्ध भयो । ङस्मा पनि यही प्रक्रियाद्वारा 'बहुश्रेयस्याः' यही रूप सिद्ध हुन्छ ।

**बहुश्रेयसीनाम्** बहुश्रेयसी शब्ददेखि षष्ठीको बहुवचन आम् आयो, 'बहुश्रेयसी+आम्' भयो । 'बहुश्रेयसी+आम्' यहाँ बहुश्रेयसी यो नद्यन्त अङ्ग छ, त्यसदेखि पर रहेको आम् हुनाले "ह्रस्वनद्यापो नुट्"ले आम्को नुट् आगम भयो 'बहुश्रेयसीनाम्' सिद्ध भयो । यहाँ 'श्रे' कोरेफ णत्वको निमित्त भए पनि 'सी'को दन्त्य सकारले व्यवधान भएकोले णत्व भएन ।

**ङेरामिति-**नद्यन्त शब्द, आबन्त शब्द र नी शब्ददेखि पर रहेका ङिका स्थानमा आम् आदेश होस् ।

**बहुश्रेयस्याम्-** बहुश्रेयसी शब्ददेखि सप्तमीको एकवचन ङि आयो, 'बहुश्रेयसी+इ' भयो, नद्यन्त शब्द बहुश्रेयसीदेखि पर हुनाले इका स्थानमा "ङेराम्नद्याम्नीभ्यः" ले आम् भयो, बहुश्रेयसी+आम् भयो । यहाँ आम्को "ह्रस्वनद्यापो नुट्" ले नुट् पनि पाये, "स्थानिवदादेशोऽनल्विधौ" लाएर इ मा रहेको ङित्त्वधर्म आम्मा आएपछि "आण् नद्याः" ले आट्आगम पनि पायो, "विप्रतिषेधे परं कार्यम्" लगाएर परत्वात् नुट्लाई बाधेर आट् आगम भयो "आटश्च" ले वृद्धि भयो 'बहुश्रेयसी+आम्' भयो, पुनः "ह्रस्वनद्यापो०" ले नुट् पाएमा "सकृद्गतौ विप्रतिषेधे न यद् बाधितं तद् बाधितमेव" यो परिभाषाले विप्रतिषेध सकृद्गति छ । अतः विप्रतिषेधमा एकपटक बाधेपछि बाधिएको बाधियै हुन्छ भनेको हुनाले फेरि नुट् भएन । यण् भयो 'बहुश्रेयस्याम्' । सिद्ध भयो ।

**शेषं पपीवदिति-** बाँकी बहुश्रेयसी शब्दका रूप पपी शब्दका जस्तै हुन्छन् । अनि साध्ने प्रक्रिया पनि त्यहाँ पपी शब्दमा झैं हुन्छ ।

अङ्यन्तत्वान्न सुलोपः अतिलक्ष्मीः । शेषं बहुश्रेयसीवत् ॥ प्रधीः ॥

**१९८. अचिश्नुधातुभ्रुवां य्वोरियङुवङौ ६ ४ । ७७ ॥**

श्नुप्रत्ययान्तस्येवर्णोवर्णान्तस्य धातोर्भ्रू इत्यस्य चाङ्गस्येयङुवङौ स्तोऽजादौ प्रत्यये परे । इति प्राप्ते ॥

---

**बहुश्रेयसी शब्दका रूपहरू–**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | बहुश्रेयसी | बहुश्रेयस्यौ | बहुश्रेयस्यः | **द्वि.** | बहुश्रेयसीम् | बहुश्रेयस्यौ | बहुश्रेयसीन् |
| **तृ.** | बहुश्रेयस्या | बहुश्रेयसीभ्याम् | बहुश्रेयसीभिः | **च.** | बहुश्रेयस्यै | बहुश्रेयसीभ्याम् | बहुश्रेयसीभ्यः |
| **प.** | बहुश्रेयस्याः | बहुश्रेयसीभ्याम् | बहुश्रेयसीभ्यः | **ष.** | बहुश्रेयस्याः | बहुश्रेयस्योः | बहुश्रेयसीनाम् |
| **स.** | बहुश्रेयस्याम् | बहुश्रेयस्योः | बहुश्रेयसीषु | **सं.** | हे बहुश्रेयसि ! | हे बहुश्रेयस्यौ ! | हे बहुश्रेयस्यः ! |

**अङ्यन्तत्वादिति-** अतिलक्ष्मी शब्द ङ्यन्त नहुनाले "हल्ङ्याब्भ्यो दीर्घात्०" यस सूत्रले सुको लोप हुँदैन 'अतिलक्ष्मीः' विसर्ग-सहित हुन्छ ।

लक्ष्मी शब्द "अवितृतन्त्रिभ्य ईः" यो औणादिक ई प्रत्ययको प्रकरणमा "लक्षेर्मुट् च" ले ई प्रत्यय र मुट् आगम भएर बनेको हो । अतः ङीप् प्रत्ययान्त हैन । दीर्घ ईकारान्त, देवीवाचक लक्ष्मी शब्द ङ्यन्त हो कि भन्ने सन्देह नगर्नू । यही कुरा सम्झाउन "अङ्यन्तत्वान्न सुलोपः" भनिएको हो । 'लक्ष्मीम् अतिक्रान्तः' यस अर्थमा "अत्यादयः क्रान्ताद्यर्थे द्वितीयया" यो वार्तिकले **समास** भएर बनेको अतिलक्ष्मी शब्द हो । यहाँ पनि बहुश्रेयसी- शब्द घटक श्रेयसी- शब्दलाई **नदी** संज्ञा भएझैं अतिलक्ष्मी- शब्द-घटक लक्ष्मी शब्दलाई "प्रथमलिङ्गग्रहणं च"ले नदी संज्ञा हुन्छ ।

**अतिलक्ष्मीः–** अतिलक्ष्मी शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'अतिलक्ष्मी स्' भयो । ङ्यन्त नहुनाले "हल्ङ्याब्भ्यो०" ले स्को लोप भएन, रुत्व, विसर्ग भयो, 'अतिलक्ष्मीः' सिद्ध भयो । अतिलक्ष्मी शब्दको सुबाहेक अरू सबै विभक्ति र वचनमा बहुश्रेयसी शब्दमा जस्तै प्रक्रिया हुन्छ, तद्वत् रूप हुन्छन् ।

**प्रधीः–** (विशेष रूपले चिन्तन गर्ने व्यक्ति) प्रधीशब्ददेखि सु आयो, 'प्रधी+स्' भयो सकारका स्थानमा रु भयो रेफका स्थानमा विसर्ग भयो प्रधीः सिद्ध भयो ।

यो प्रधी शब्द 'प्रकर्षेण ध्यायति' यस अर्थमा 'प्र' उपसर्ग पूर्वमा हुने "ध्यै चिन्तायाम्" धातुदेखि "ध्यायतेः संप्रसारणञ्च" यस वार्तिकले क्विप् प्रत्यय भयो "आदेचः०" ले आत्व भयो र सम्प्रसारण भयो, 'प्र ध् इ+ आ+व्' भयो "सम्प्रसारणाच्च" ले इकार आकारको पूर्वरूप भयो, 'प्रध्+ इ+व्' भयो "हलः" ले इकारको दीर्घ भयो, 'प्रध्+ई+व्'='प्रधी+व्' यहाँ "वेरपृक्तस्य" ले वकारको लोप भएर बनेको हो । अतः प्रधीशब्द नित्यस्त्रीलिङ्ग छैन र नदी संज्ञा हुँदैन ।

ध्यायति इति धीः यो अर्थमा अनुपसृष्ट ध्यै धातुदेखि क्विप्प्रत्यय गरेपछि धीशब्द बुद्धिवाचक हुनाले नित्यस्त्रीलिङ्ग छ । अब 'प्रकृष्टा धीर्यस्य' यस्तो बहुव्रीहिसमास गरेपछि यो शब्द अतिलक्ष्मी शब्द जस्तै हुन्छ । ङ्यन्त नहुनाले सुको लोप हुन्न । नदी संज्ञा "प्रथमलिङ्गग्रहणं च" लगाएर प्रधी-शब्द-घटक 'धी' को हुन्छ । अनि शब्द प्रधी शब्द नद्यन्त हुन्छ र नदीसञ्ज्ञाबाट हुने कार्य बन्दछन् । मूलमा प्रकर्षेण ध्यायति यस्तो विग्रहबाट बनेको प्रधीशब्द लिएको छ ।

**अचि इति-** श्नु प्रत्यय अन्तमा हुने अङ्गका स्थानमा र इवर्ण उवर्ण अन्तमा हुने जो धातु तदन्त अङ्गका स्थानमा, भ्रू यस अङ्गका स्थानमा पनि 'इयङ्', 'उवङ्' आदेश होऊन्, अच् आदिमा

**१९९. एरनेकाचोऽसंयोगपूर्वस्य ६ । ४ । ८२ ॥**

धात्ववयवसंयोगपूर्वो न भवति य इवर्णस्तदन्तो यो धातुस्तदन्तस्यानेकाचोऽङ्गस्य यणजादौ प्रत्यये । प्रध्यौ । प्रध्यः । प्रध्यम् । प्रध्यौ । प्रध्यः ।

---

हुने प्रत्यय पर भएमा । यो सूत्रले प्रधीका ईकारका स्थानमा इयङ् उवङ् प्राप्त भएमा ।

**एरनेकाच इति-** धातुको अवयव संयोग पूर्वमा नहुने जो इवर्ण, त्यो अन्तमा हुने जो धातु, त्यो अन्तमा हुने अनेकाच् अङ्गका स्थानमा यण् होस् । अच् आदिमा हुने प्रत्यय पर भएमा ।

**प्रध्यौ-** प्रधी शब्ददेखि प्रथमाको द्विवचन औ आयो, 'प्रधी+औ' भयो, 'प्रधी+औ' यहाँ "इको यणचि" ले यण् पायो, त्यसलाई बाधेर "प्रथमयोः०" ले पाएको पूर्वसवर्णदीर्घ "दीर्घाज्जसि च"ले निषेध भयो । "बाधकाभावे०" लाएर पुनः यण् पायो, त्यसलाई बाधेर "अचि श्नुधातुभ्रुवां०"ले इयङ् उवङ् आदेश पायो, त्यसलाई बाधेर "एरनेकाचोऽसंयोगपूर्वस्य" ले धातुको अवयव संयोगपूर्वमा नहुने इवर्ण-धीको इकार छ, त्यो अन्तमा हुने 'धी' धातु र तदन्त अनेकाच् अङ्ग 'प्रधी' छ, अजादि प्रत्यय 'औ' पर छ, र "अलोऽन्त्यस्य" लाएर अन्त्य अल् इकारका स्थानमा यण् हुँदा आन्तरतम्यात् यकार भयो 'प्रध्+य्+औ' भयो, वर्णमेलन भयो, 'प्रध्यौ' यो रूप सिद्ध भयो ।

द्वितीयाको द्विवचन औट्मा पनि यही साधन प्रक्रिया द्वारा 'प्रध्यौ' सिद्ध हुन्छ ।

**प्रध्यम्-** प्रधी शब्ददेखि द्वितीयाको एकवचन अम् आयो, 'प्रधी+अम्' भयो यहाँ "इको यणचि"ले यण् पायो त्यसलाई बाधेर "अमि पूर्वः" ले पाएको पूर्वरूपलाई बाधेर "अचिश्नुधातुभ्रुवां०" ले इयङ् उवङ् पायो त्यसलाई बाधेर "एरनेकाचोऽसंयोगपूर्वस्य" ले यण् गर्दा "अलोऽन्त्यस्य" लाएर प्रधीका इकारका स्थानमा य् भयो, 'प्रध्य्+अम्' भयो, वर्णमेलन भयो, 'प्रध्यम्' भयो ।

**प्रध्यः४-** जस् शस् ङसि ङस्मा यौटै रूप हुने हुनाले मूलमा४ स्थलको निमित्त यौटै रूप प्रध्यः४-राखेको छ । तर जस्मा र शस्मा साधन प्रक्रिया अलग हुन्छ । ङसि र ङस्मा भने यौटै प्रक्रिया हुन्छ । अतः यहाँ जस् शस् ङसि ङस्को अलग अलग साधन प्रक्रिया दिइन्छ ।

(जस्मा) **प्रध्यः-** प्रधी शब्ददेखि प्रथमाको बहुवचन जस् आयो, 'प्रधी+अस्' भयो, 'प्रधी+अस्' यहाँ "इको यणचि"ले यण् पायो त्यसलाई बाधेर "प्रथमयोः पूर्वसवर्णः"ले पूर्वसवर्णदीर्घ पायो, त्यसको "दीर्घाज्जसि च" ले निषेध भयो, "बाधकाभावे०" लगाएर पुनः यण् पायो, त्यसलाई बाधेर "अचिश्नुधातुभ्रुवां०"ले इयङ् उवङ् आदेश पायो, त्यसलाई बाधेर "एरनेकाचोऽसंयोगपूर्वस्य"ले धातुको अवयव संयोगपूर्वमा नहुने इवर्ण धीको इकार छ, तदन्त अनेकाच् अङ्ग प्रधी छ, अजादि प्रत्यय अस् पर छ र 'अलोऽन्त्यस्य' लाएर अन्त्य अल् प्रधीका ईकारका स्थानमा यण् हुँदा आन्तरतम्यात् यकार भयो, 'प्रध्य्+अस्' भयो वर्णमेलन भयो, 'प्रध्यस्' सकारको रुत्व, विसर्ग, भयो, 'प्रध्यः' सिद्ध भयो ।

(शस्मा) **प्रध्यः-** प्रधी शब्ददेखि द्वितीयाको बहुवचन शस् आयो, 'प्रधी+अस्' भयो, प्रधी+अस् यहाँ 'इको यणचि' ले यण् पायो त्यसलाई बाधेर 'प्रथमयोः पूर्वसवर्णः' ले पूर्वसवर्णदीर्घ पायो, त्यसलाई वाधेर "अचिश्नुधातुभ्रुवां०" ले इयङ् उवङ् पायो त्यसलाई बाधेर "एरनेकाचोऽसंयोगपूर्वस्य" ले यण् गर्दा पूर्ववत् "अलोऽन्त्यस्य" लाएर प्रधीका ईकारका स्थानमा यकार भयो 'प्रध्य्+अस्' भयो, वर्णमेलन भयो, रुत्व, विसर्ग, भयो, 'प्रध्यः' सिद्ध भयो ।

(ङसि ङस्मा) **प्रध्यः-** प्रधी शब्ददेखि पञ्चमीको एकवचन ङसि आयो, 'प्रधी+अस्' भयो, यहाँ "इको यणचि" ले यण् पायो त्यसलाई बाधेर "अचिश्नुधातुभ्रुवां०" ले इयङ् उवङ् आदेश पायो, त्यसलाई बाधेर "एरनेकाचोऽसंयोगपूर्वस्य"ले पूर्ववत् "अलोऽन्त्यस्य" लाएर प्रधीका ईकारका स्थानमा यण् हुँदा यकार भयो । 'प्रध्य्+अस्' भयो वर्णमेलन भयो, रुत्व, विसर्ग भयो 'प्रध्यः' सिद्ध भयो । ङस्मा पनि यही प्रक्रियाद्वारा 'प्रध्यः' यही रूप बन्दछ ।

प्रध्यि । शेषं पपीवत् । एवं ग्रामणीः । ङौ तु ग्रामण्याम् ॥ अनेकाचः किम् ? नीः । नियौ । नियः ।

**प्रध्यि-** प्रधी शब्ददेखि सप्तमीको एकवचन ङि आयो, 'प्रधी+इ' भयो, 'प्रधी+इ' यहाँ "अकः सवर्णे दीर्घः"ले दीर्घ पायो त्यसलाई बाधेर "अचिश्नुधातुभ्रुवां य्वोरियङुवङौ"ले इयङ उवङ् पायो त्यसलाई बाधेर "एरनेकाचोऽसंयोगपूर्वस्य" ले पूर्ववत् यण् भयो, 'प्रध्यि' सिद्ध भयो ।

**शेषमिति-** बाँकी स्थलमा प्रधी शब्दका रूप पपीशब्दका जस्तै हुन्छन् । साधन प्रक्रिया भने फरक छ पपीशब्दमा अजादि विभक्तिमा "इको यणचि" ले यण् हुन्छ भने यहाँ "इको यणचि"लाई "अचि श्नुधातु०" लाई पनि बाधेर "एरनकोचो०" ले यण् हुन्छ । हलादि विभक्तिमा भने केही फरक हुँदैन र विशेष कार्य पनि छैन ।

**प्रधीशब्दका रूप-**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | प्रधीः | प्रध्यौ | प्रध्यः । | **द्वि.** | प्रध्यम् | प्रध्यौ | प्रध्यः । |
| तृ. | प्रध्या | प्रधीभ्याम् | प्रधीभिः । | च. | प्रध्ये | प्रधीभ्याम् | प्रधीभ्यः । |
| प. | प्रध्यः | प्रधीभ्याम् | प्रधीभ्यः । | **ष.** | प्रध्यः | प्रध्योः | प्रध्याम् । |
| **स.** | प्रध्यि | प्रध्योः | प्रधीषु । | **सं.** | हे प्रधीः ! | हे प्रध्यौ ! | हे प्रध्यः ! |

**एवमिति-** यस्तै 'ग्रामणी'शब्द पनि जान्नु । ग्रामणी शब्द पनि प्रधीशब्द जस्तै हो । प्रधी शब्दमा प्रशब्द पूर्वमा हुने धीधातु छ । ग्रामणी शब्दमा ग्राम शब्दपूर्वमा हुने नीधातु छ ।

[३९]**ग्रामणीः-** (ग्रामाधिप) ग्रामणी शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'ग्रामणी+सु' भयो ङयन्त नहुनाले सुलोप भएन रुत्व, विसर्ग, भयो, 'ग्रामणीः' सिद्ध भयो ।

**ङौ त्विति-** ङिमा त ग्रामण्याम् यस्तो रूप हुन्छ । प्रधी शब्दको ङिमा 'प्रध्यि' हुन्छ भने ग्रामणीशब्दको ङिमा 'ग्रामण्याम्' हुन्छ यही फरक छ । ग्रामणी शब्दमा "ङेराम्नद्याम्नीभ्यः" यो सूत्रले 'ङि'का स्थानमा 'आम्' आदेश हुन्छ । 'ग्रामणी' यहाँ अन्तको णी, 'नी' शब्द हो-"अग्रग्रामाभ्यां नयतेर्णो वाच्यः" यस वार्तिकले णत्व भएर 'नी' का स्थानमा 'णी' भएको हो ।

**अनेकाचः किमिति-** अनेकाचः किम् ? "एरनेकोचोऽसंयोगपूर्वस्य" यस सूत्रमा "अनेकाचः" किन भन्नु ? नभन्ने हो भने सूत्रको अर्थ कस्तो होला ? धातुको अवयव संयोग पूर्वमा नहुने जो इवर्ण तदन्त धातुरूप अङ्गका स्थानमा यण् होस्, अजादि प्रत्यय पर भएमा', यस्तो होला । 'यस्तो अर्थ भए दोष जाला कहाँ ? 'नी+औ', 'नी+अस्' यहाँ यही पनि यो सूत्रले इयङ्लाई बाधेर यण् भैजाला र 'न्यौ' 'न्यः' यस्ता अनिष्ट रूप सिद्ध होलान् । सो नहोस् भनेर हामीले 'अनेकाचः' भन्यौ 'अनेकाचः' भने पछि सूत्रको अर्थ- 'धातुको अवयव संयोगपूर्वमा नहुने जो इवर्ण तदन्त जो धातु तदन्त अनेकाच् अङ्गका स्थानमा यण् होस्' यस्तो अर्थ भयो', यस्तो अर्थ भएपछि यहाँ नी यो अनेकाच् अङ्ग नभएको हुनाले यण् भएन, "अचिश्नुधातु०" ले नीका ईकारका स्थानमा इयङ् भयो 'नियौ' 'नियः' सिद्ध भयो । उपर्युक्त प्रक्रिया प्रत्युदाहरण- साधन प्रक्रिया हो । नीशब्दको सामान्य साधनप्रक्रिया तल दिग्दर्शन गरिन्छ ।

**नीः-** नी शब्ददेखि प्रथमाको एकवचन सु आयो, नीस् भयो रुत्व विसर्ग भयो 'नीः' ।

**नियौ-** नी शब्ददेखि प्रथमाको द्विवचन औ आयो, 'नी+औ' भयो । 'नी+औ' यहाँ "इको यणचि"लाई बाधेर "प्रथमयोः०"ले पूर्वसवर्णदीर्घ पाएको "दीर्घाज्जसि च"ले निषेध भयो पुनः "इको

३९ "ग्रामणीर्नापिते पुंसि श्रेष्ठे ग्रामाधिपे त्रिषु" इति मेदिनी

अमि शसि च परत्वादियङ् नियम् । ङेराम् नियाम् ॥ असंयोगपूर्वस्य किम् ? सुश्रियौ । यवक्रियौ ॥

यणचि"ले यण् पायो त्यसलाई बाधेर "अचिश्नुधातुभ्रुवां०"ले यहाँ इवर्ण अन्तमा हुने नी धातु छ, त्यसदेखि पर अजादि प्रत्यय औ छ र नीका ईकारका स्थानमा इयङ् उवङ् दुवै पायो, अनुबन्ध लोप भयो 'इय्' 'उव्' भयो, "अलोऽन्त्यस्य" लगाएर अन्त्य अल्-नीको इकारका स्थानमा पाएकोमा "अनेकाल् शित्सर्वस्य" ले 'नी' सबैका स्थानमा पायो, त्यसलाई बाधेर "ङिच्च" ले अन्त्य अल् ईकारका स्थानमा इय्, उव् दुवै पायो, आन्तरतम्याद् इय् आदेश भयो, 'निय्+औ' भयो, यकार औमा लाग्न गयो, 'नियौ' सिद्ध भयो । यस्तै प्रकारले अजादि विभक्ति पर भएमा सर्वत्र अरूलाई बाधेर इयङ् आदेश हुन्छ । भ्याम् भिस् आदि हलादि विभक्तिमा विशेष कार्य हुँदैन ।

**अमि शसि चेति-** अम् र शस्मा पनि "अमि पूर्वः" "प्रथमयोः पूर्वसवर्णः" यी दुईलाई बाधेर पर हुनाले इयङ् नै हुन्छ । 'नियम्', 'नियः' यी रूप हुन्छन् ।

**ङेरामिति-** सप्तमीको एकवचन ङिका स्थानमा "ङेराम्नद्याम्नीभ्यः" यस सूत्रले 'नी' शब्ददेखि पर हुनाले आम् आदेश हुन्छ र इयङ् भएर 'नियाम्' यस्तो रूप बन्दछ ।

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प.** | नीः, | नियौ, | नियः । | **द्वि.** | नियम् | नियौ | नियः । |
| **तृ.** | निया, | नीभ्याम् | नीभिः । | **च.** | निये, | नीभ्याम्, | नीभ्यः । |
| **पं.** | नियः, | नीभ्याम्, | नीभ्यः । | **ष.** | नियः | नियोः | नियाम् । |
| **स.** | नियाम्, | नियोः | नीषु । | **सं.** | हेनीः ! | हे नियौ ! | हे नियः ! |

**असंयोगेति-** असयोगपूर्वस्य किम् "एरनेकाचोऽसंयोगपूर्वस्य" यो सूत्रमा असंयोगपूर्वस्य किन भन्नु ? न भन्ने हो भने सूत्रको अर्थ- "इवर्ण अन्तमा हुने जो धातु त्यो अन्तमा हुने अनेकाच् अङ्गका स्थानमा यण् होस् अजादि प्रत्यय पर भएमा" यस्तो होला, यस्तो अर्थ भए दोष जाला कहाँ ? 'सुश्री+औ' 'यवक्री+औ' यहाँ, यहीं पनि "अचि श्नुधातु०" लाई बाधेर यो सूत्रले यण् भैजाला । सो नहोस भनेर हामीले "असंयोगपूर्वस्य" भन्यौ, भने पछि संयोग पूर्वमा नहुने धातु भन्ने अर्थ भयो, सुश्री, यवक्री, यहाँ संयोग पूर्वमा नहुने धातु छैन, 'श्री', 'क्री' धातु संयोग पूर्वमा भएका छन् र यण् भएन । "अचिश्नुधातुभ्रुवां०"ले इयङ् भयो 'सुश्रियौ' 'यवक्रियौ' भयो । प्रत्युदाहरण अनुसार 'सुश्रियौ', 'यवक्रियौ'को सिद्धि देखाइयो । सामान्यतः सुश्री यवक्री शब्दको रूपसिद्धिप्रक्रियाको दिग्दर्शन तल गराइन्छ ।

**सुश्रीः-** सुष्ठु श्रयति, इति सुश्रीः (राम्रोसँग आश्रय लिनेवाला व्यक्ति)

[४०] **सुश्री-** सुश्री शब्ददेखि सु आयो, 'सुश्री+सु' भयो, ङ्यन्त नहुनाले सुको लोप भएन रुत्व विसर्ग भयो, 'सुश्रीः' सिद्ध भयो ।

**सुश्रियौ-** सुश्री शब्ददेखि औ आयो, 'सुश्री+औ' भयो यहाँ "इको यणचि" लाई बाधेर "प्रथमयोः०"ले पाएको पूर्वसवर्णदीर्घलाई "दीर्घाज्जसि च"ले निषेध भयो, पुनः यण् पायो,

---

४० "क्विब् वचिप्रच्छ्यायतस्तुकटप्रुजुश्रीणां दीर्घोऽसम्प्रसारणं चेति क्विप् । सुष्ठ श्रयति इति सुश्रीः । यदि तु शोभना श्रीर्यस्य, शोभना चासौ श्रीः इति वा विग्रहो विधीयते, तदा श्रीशब्दस्य नित्यस्त्रीत्वाद् सुश्रीशब्दो बहुश्रेयसीवत् भवति । इति केचित्, धी,ह्री,श्रीशब्दानां "नेयङुवङ् स्थानावस्त्री" इति नदीत्वनिषेधात् तादृशविग्रहेऽपि सुश्रीशब्दो न बहुश्रेयसीवद् यतो हि "नेयङुवङ्स्थानावस्त्री" इति नदीत्वनिषेधो "यूस्त्र्याख्यौ नदी इत्यस्य "प्रथमलिङ्गग्रहणं च" इति तद्वार्तिकस्य चेत्यपरे । अत्र द्वितीयपक्ष एव श्रेयान् ।

२००. **गतिश्च** १ । ४ । ६० ॥

प्रादयः क्रियायोगे गतिसंज्ञाः स्युः । **वा.**(गतिकारकेतरपूर्वपदस्य यण् नेष्यते) । शुद्धधियौ ॥

---

त्यसलाई बाधेर "अचिश्नुधातुभ्रुवां०"ले पूर्ववत् इयङ् भयो 'सुश्रियौ' सिद्ध भयो । यसैगरी जस् आदि अच् आदिमा हुने विभक्तिमा सर्वत्र इयङ् हुन्छ । शस्मा "प्रथमयोः पूर्वसवर्णः"लाई र अम्मा "अमि पूर्वः"लाई इयङ्ले बाध्दछ । ङिमा "अकः सवर्णे०" लाई बाध्दछ । जस्मा पूर्वसवर्णदीर्घको "दीर्घाज्जसिच"ले निषेध भएपछि पुनः पाएको यण्लाई बाध्छ । त्यसबाहेक अरू अजादि विभक्तिमा "इको यणचि"लाई बाधेर इयङ् हुन्छ । हलादि विभक्तिमा विशेष कार्य छैन । संबोधनमा प्रथमाका जस्तै रूप हुन्छन् । रूप तालिका तल दिइन्छ ।

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| प्र. | सुश्रीः | सुश्रियौ | सुश्रियः । | द्वि. | सुश्रियम् | सुश्रियौ | सुश्रियः । |
| तृ. | सुश्रिया, | सुश्रीभ्याम्, | सुश्रीभिः । | च. | सुश्रिये, | सुश्रीभ्याम् | सुश्रीभ्यः । |
| पं. | सुश्रियः | सुश्रीभ्याम् | सुश्रीभ्यः । | ष. | सुश्रियः | सुश्रियोः | सुश्रियाम् । |
| स. | सुश्रियि | सुश्रियोः | सुश्रीषु । | सं. | हे सुश्रीः ! | हे सुश्रियौ ! | हे सुश्रियः ! |

यवक्रीशब्दका पनि सुश्री शब्दका जस्तै रूप हुन्छन् । साधनप्रक्रिया पनि समान छ ।

**गतिश्चेति-** प्रादिहरू क्रियाका योगमा गतिसंज्ञक पनि होउन् । "गतिश्च" यो सूत्र "उपसर्गाः क्रियायोगे" पछिको सूत्र हो । क्रियाका योगमा प्रादिलाई उपसर्गसंज्ञा "उपसर्गाः क्रियायोगे"ले भएकै छ, त्यसको लगत्तै पछिको यो सूत्रले गतिसंज्ञा पनि होस् भन्नाले सँग-सँगै क्रियायोगमा प्रादिलाई उपसर्गसंज्ञा र गतिसंज्ञा दुवै हुन्छ भन्ने बुझिन्छ । गतिसंज्ञा र उपसर्गसंज्ञाको फल अलग अलग छ ।

**गतिकारकेति-** गति र कारकभिन्न पूर्वपद हुने अङ्गका स्थानमा यण् इष्ट छैन । शुद्धा धीर्यस्य=शुद्ध छ बुद्धि जसको (शुद्ध बुद्धि भएको व्यक्ति) यस विग्रहमा शुद्धधी शब्दमा शुद्ध शब्द गति र कारकदेखि भिन्न हुनाले "एरनेकाचो०"ले यण् हुँदैन, इयङ् हुन्छ । इयङ्को स्थानी भएपछि नदीसंज्ञा निषेध हुन्छ, । नदीसंज्ञा नभएपछि संबुद्धिमा ह्रस्व र ङित् विभक्तिमा आट्आगम हुन्न । सुधीशब्दका जस्तै रूप हुन्छन् । शुद्धं=ब्रह्म, ध्यायति यो विग्रह गर्ने हो भने शुद्ध शब्द-पूर्वपद भएकोले यण् निषेध हुँदैन र प्रधी शब्दका जस्तै शुद्धध्यौ, शुद्धध्यः आदि रूप हुन्छन् । शुद्धधीर्यस्य यो विग्रहमा शुद्धधी शब्द, शोभना श्रीर्यस्य यो विग्रहमा सुश्री शब्दको सुष्ठु धीर्यस्य यो विग्रहमा सुधी शब्दको, धी, श्री, शब्द पहिले नित्य स्त्रीलिङ्गमा वर्तमान हुनाले प्रथम लिङ्गग्रहणं च यो वार्तिकले नदीसंज्ञा हुनुपर्ने यो शङ्का यहाँ हुन्छ, तर यी शब्दमा त्यो वार्तिकले पाएको नदीसंज्ञा "नेयङुवङ्स्थानावस्त्री"ले निषेध हुन्छ । किन कि यी दुवै शब्द इयङ्का स्थानी छन् ।

**शुद्धधीः-** शुद्धधी शब्ददेखि प्रथमाको एक वचन सु आयो, 'शुद्धधी+स्' भयो सकारको रुत्व विसर्ग भयो 'शुद्धधीः' सिद्ध भयो ।

**शुद्धधियौ-** शुद्धधी शब्ददेखि औ आयो, 'शुद्धधी+औ' यहाँ "इको यणचि"लाई बाधेर "प्रथमयोः पूर्वसवर्णः"ले पूर्वसवर्णदीर्घ पाएको "दीर्घाज्जसि च" ले निषेध भयो पुनः यण् पाएको बाधेर "अचि श्नुधातु०"ले इयङ् पायो त्यसलाई बाधेर "एरनेकाचो०"ले यण् पाएकोमा "गतिकारकेतरपूर्वपदस्य यण् नेष्यते" यस वार्तिकले शुद्धधी शब्दमा 'शुद्ध' यो गति र कारक भिन्न

**२०१. न भूसुधियो : ६ ४ । ८५ ॥**

एतयोरचि सुपि यण्न । सुधियौ । सुधिय इत्यादि ॥ सुखमिच्छतीति सुखीः । सुतीः सुख्यौ । सुत्यौ । सुख्युः । सुत्युः । शेषं प्रधीवत् । शम्भुर्हरिवत् ।

---

पूर्वपद भएकोले यण् निषेध भयो, "वाधकाभावे०" लगाएर "अचिश्नुधातुभ्रुवां०" ले इयङ् भयो, 'शुद्धधियौ' सिद्ध भयो । शुद्धधी शब्दका रूप सुश्री शब्दका जस्तै हुन्छन् ।

सुष्ठु ध्यायति यस विग्रहमा "ध्यायतेः संप्रसारणं च" यो वार्तिकले सु उपसर्ग पूर्वमा हुने ध्या धातुदेखि क्विप् प्रत्यय, धातुको सम्प्रसारण, दीर्घ भएर सुधीशब्द बन्दछ ।

**नभूसुधीति-** भूधातु र सुधी शब्दका स्थानमा अच् आदिमा हुने सुप् पर भएमा यण् नहोस् । सुधियौ, सुधियः इत्यादि रूप हुन्छन् ।

**सुधीः-** (राम्रो चिन्तगर्ने व्यक्ति) सुधी शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'सुधी+स्' भयो सकारको रुत्व, विसर्ग भयो 'सुधीः' सिद्ध भयो ।

**सुधियौ, सुधियः-** सुधी शब्ददेखि प्रथमाद्विवचन औ आयो, 'सुधी+औ' भयो यण्लाई बाधेर पूर्वसवर्णदीर्घ पाएको "दीर्घाज्जसि च"ले निषेध भएपछि पुनः यण् पायो त्यसलाई बाधेर "अचिश्नुधातुभ्रुवां०"ले इयङ् उवङ् पायो, त्यसलाई बाधेर "एरनेकाचो०" ले यण् पायो, पाएमा "न भूसुधियोः" यस सूत्रले भूधातु र सुधी शब्दका स्थानमा यण् नहोस् भनेर निषेध गरेकोले "बाधकाभावे०" लगाएर "अचिश्नुधातु०"ले इयङ् भयो 'सुधियौ' रूप सिद्ध भयो । जस्मा 'सुधी+अस्' यहाँ पूर्ववत् इयङ् भएर 'सुधियः' हुन्छ । सुधीशब्दका अरू रूप पनि सुश्रीशब्दका जस्तै हुन्छन् ।

**सुखमिति-** सुखको इच्छा गर्नेलाई सुखी भनिन्छ । सुत-(छोरा)को इच्छा गर्नेलाई सुती भनिन्छ । सुखम् इच्छति यस अर्थमा "सुप आत्मनः क्यच्" ले सुख शब्ददेखि क्यच् हुन्छ । "क्यचि च"ले अकारका स्थानमा ईकार भएर 'सुखीय' धातु बन्दछ । सुखीय धातुदेखि क्विप् प्रत्यय गरेर सर्वापहारिलोप, भएपछि सुखीयका अकार र यकारको लोप भएर 'सुखी'शब्द बन्दछ । यस्तै प्रकारले 'सुती'शब्द पनि बन्दछ ।

**सुखीः-** सुखी शब्ददेखि सु आयो, 'सुखी स्' भयो रूत्व, विसर्ग भयो 'सुखीः' सिद्ध भयो । यस्तै सुतीशब्दको सुमा पनि यस्तै प्रकारले 'सुतीः' हुन्छ ।

सुख्यौ, सुत्यौ सुखी शब्ददेखि औ आयो, प्रधी शब्दमा जस्तै प्रक्रिया भएर अन्तमा "एरनेकाचो०"ले यण् भयो सुख्यौ । यस्तै प्रकारले सुत्यौ पनि हुन्छ ।

**सुख्युः-** सुखी शब्ददेखि ङसि आयो, 'सुखी+अस्' भयो, पूर्ववत् "एरनेकाचो०" ले यण् भयो "ख्यत्यात्परस्य" सुख्यस्का अकारका स्थानमा उकार भयो 'सुख्युस्' भयो रुत्व, विसर्ग भयो, 'सुख्युः' सिद्ध भयो । सुती शब्दको ङसिमा पनि यस्तै प्रकारले 'सुत्युः' हुन्छ । ङस्मा पनि यही प्रक्रियाद्वारा सुख्युः, सुत्युः, रूप हुन्छन् ।

**शेषमिति -** सुखी, सुती, शब्दका बाँकी रूप प्रधी शब्दका जस्तै हुन्छन् । अर्थात् ङसि र ङस् मा बाहेक सबै प्रधी शब्दमा जस्तै रूप हुन्छन् ।

**ह्रस्व उकारान्त शब्दहरू-**

**शम्भुरिति-** शम्भु शब्द हरि शब्द जस्तै हो ।

एवं भान्वादयः ॥

२०२. **तृज्वत्क्रोष्टुः** ७ । १ । ९५ ॥

असम्बुद्धौ सर्वनामस्थाने परे।क्रोष्टुशब्दस्य स्थाने क्रोष्टृशब्दः प्रयोक्तव्य इत्यर्थः ॥

२०३. **ऋतो ङिसर्वनामस्थानयोः** ७ । ३ । ११० ॥

ऋतोऽङ्गस्य गुणो ङौ सर्वनामस्थाने च। इति प्राप्ते-

---

**शम्भुः**- शम्भु शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'शम्भु+स्' भयो रुत्व, विसर्ग भयो 'शम्भुः' सिद्ध भयो ।

**शम्भू**- शम्भु शब्ददेखि प्रथमाको द्विवचन औ आयो, 'शम्भु+औ' भयो "इको यणचि" ले यण् पायो, त्यसलाई बाधेर "प्रथमयोः०" ले पूवसवर्णदीर्घ, भयो 'शम्भू', सिद्ध भयो ।

**शम्भवः**- शम्भु शब्ददेखि जस् आयो, शम्भु अस् भयो "प्रथमयोः०" लाई बाधेर "जसि च" ले गुण भयो, 'शम्भो+अस्' भयो, अव् आदेश भयो, रुत्व, विसर्ग भयो, 'शम्भवः' सिद्ध भयो ।

**शम्भुम्**- शम्भु शब्ददेखि अम् आयो, 'शम्भु+अम्' भयो, यण्लाई बाधेर पूर्वसवर्णदीर्घ पायो, त्यसलाई बाधेर "अमि पूर्वः"ले पूर्वरूप भयो 'शम्भुम्' सिद्ध भयो ।

**शम्भू**- शम्भु शब्ददेखि औट् आयो, 'शम्भु+औ' भयो प्रथमाको द्विवचन औमा जस्तै प्रक्रिया भयो, 'शम्भू' सिद्ध भयो ।

**शम्भून्**- शम्भु शब्ददेखि शस् आयो, 'शम्भु+अस्' भयो यण्लाई बाधेर "प्रथमयोः०" ले पूर्वसवर्णदीर्घ भयो, शम्भूस् "तस्माच्छसोः०"ले सकारको नकार भयो, 'शम्भून्' सिद्ध भयो ।

**शम्भुना**- शम्भु शब्दलाई "शेषोघ्यसखि" ले घिसंज्ञा भएपछि शम्भु शब्ददेखि तृतीयाको एकवचन टा आयो, 'शम्भु+आ' भयो "आङो नाऽस्त्रियाम्" ले ना आदेश भयो 'शम्भुना' सिद्ध भयो ।

भ्याम्, भिस्मा विशेष कार्य छैन । ङे ङसि ङस् र ङि मा घिसंज्ञाका विशेष कार्य हरि शब्दमा जस्तै हुन्छन् । साधनप्रक्रिया पनि हरि शब्दमा जस्तै हुन्छ । दिग्दर्शनका निमित्त केही रूप सिद्ध गर्ने प्रक्रिया माथि देखाइयो । रूपतालिका तल दिइन्छ–

शम्भु शब्दका रूप-

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| प्र. | शम्भुः | शम्भू | शम्भवः | द्वि. | शम्भुम् | शम्भू | शम्भून् |
| तृ. | शम्भुना | शम्भुभ्याम् | शम्भुभिः | च. | शम्भवे | शम्भुभ्याम् | शम्भुभ्यः |
| पं. | शम्भोः | शम्भुभ्याम् | शम्भुभ्यः | ष. | शम्भोः | शम्भ्वोः | शम्भूनाम् |
| स. | शम्भौ | शम्भ्वोः | शम्भुषु | सं. | हे शम्भो ! | हे शम्भू ! | हे शम्भवः ! |

**एवमिति**- यस्तै प्रकारले भानु आदि शब्द पनि जान्नु ।

**तृज्वदिति**- क्रोष्टु शब्द तृच् प्रत्ययान्त जस्तो होस्, अर्थात् क्रोष्टुशब्दका स्थानमा तृच् प्रत्ययान्त आदेश होस्, संबुद्धिभिन्न सर्वनामस्थान पर भएमा ।

**क्रोष्टुशब्दस्येति**- क्रोष्टु शब्दका स्थानमा क्रोष्टृ शब्द प्रयोग गर्नुपर्छ भन्ने अर्थ हो ।

**ऋतोङीति**- ह्रस्वऋकारान्त अङ्गका स्थानमा गुण होस् ङि र सर्वनाम स्थानमा पर भएमा । यो सूत्रले क्रोष्टृका स्थानमा गुण पाएमा

२०४. **ऋदुशनस्पुरुदंसोऽनेहसां च ७ । १ । ९४ ॥**

ऋदन्तानामुशनसादीनां चानङ् स्यादसम्बुद्धौ सौ ॥

२०५. **अप्तृन्तृच्स्वसृनप्तृनेष्टृत्वष्टृक्षत्तृहोतृपोतृप्रशास्तृणाम् ६ । ४ । ११ ॥**

अबादीनामुपधाया दीर्घोऽसम्बुद्धौ सर्वनामस्थाने । क्रोष्टा । क्रोष्टारौ । क्रोष्टारः । क्रोष्टारम् । क्रोष्टून् ॥

---

**ऋदुशनेति-** ह्रस्वऋकार अन्तमा हुने शब्दका स्थानमा र उशनस् शब्द, पुरुदंसस् शब्द, अनेहस् शब्दका स्थानमा पनि अनङ्आदेश होस्, संबुद्धिभिन्न सु पर भएमा ।

**अप्तृन्निति-** अप् शब्द, तृन् प्रत्ययान्त शब्द, तृच् प्रत्ययान्त शब्द, स्वसृ शब्द, नप्तृ शब्द, नेष्टृ शब्द, त्वष्टृ शब्द, क्षत्तृ शब्द, होतृ शब्द, पोतृ शब्द, प्रशास्तृ शब्दका उपधाका स्थानमा दीर्घ होस्, संबुद्धिभिन्न सर्वनामस्थान पर भएमा ।

**क्रोष्टा-** (फ्याउरो) क्रोष्टुशब्ददेखि प्रथमाको एकवचन सु आयो, 'क्रोष्टु+स्' भयो, स् यसलाई "सुडनपुंसकस्य" ले सर्वनामस्थान संज्ञा भयो "तृज्वत्क्रोष्टुः" ले संबुद्धिभिन्न सर्वनामस्थान पर भएमा क्रोष्टु शब्द तृच् प्रत्ययान्त जस्तो होस् भनेकोले क्रोष्टु शब्दका स्थानमा तृच्प्रत्ययान्त कर्तृ, हर्तृ, धर्तृ, क्रोष्टृ आदि सबै शब्द पायो । "स्थानेऽन्तरतमः" लगाएर स्थानीका स्थानले नियम भएन । अर्थमा जाँदा क्रोष्टु शब्दको शृगालरूप अर्थ छ, त्यो अर्थ भएको तृच् प्रत्ययान्त शब्दमा 'क्रोष्टृ'शब्द भएकोले क्रोष्टुका स्थानमा 'क्रोष्टृ' आदेश भयो, 'क्रोष्टृ+स्' भयो, ऋकारान्त अङ्ग क्रोष्टृका स्थानमा सर्वनामस्थान सुको 'स्' पर हुनाले "ऋतो ङिसर्वनामस्थानयोः" ले गुण पायो त्यसलाई बाधेर ऋदन्तशब्द 'क्रोष्टृ'को स्थानमा संबुद्धिभिन्न सु पर हुनाले "ऋदुशनस्पुरुदंसो०"ले अनङ् भयो । अनङ्का अङ्को इत्संज्ञा भयो, अन् भयो अन् यो "अलोऽन्त्यस्य" ले अन्त्य अल् ऋकारका स्थानमा पाएमा बाधेर 'अनेकाल् शित्सर्वस्य' ले क्रोष्टृ सबैको स्थानमा पायो, त्यसलाई बाधेर "ङिच्च" ले अन्त्य अल् ऋकारका स्थानमा अन् भयो, 'क्रोष्टन्+स्' भयो । संबुद्धिभिन्न सर्वस्थान सु पर हुनाले तृच्प्रत्ययान्त शब्दको उपधा-क्रोष्टन्को अकारका स्थानमा "अप्तृन्तृच्०"ले दीर्घ आकार भयो, 'क्रोष्टान्+स्' भयो, "हलङ्याब्भ्यो दीर्घात्०" ले सकारको लोप भयो, 'क्रोष्टान्' भयो । क्रोष्टान् यसलाई पदसंज्ञा भयो, "नलोपः प्रातिपदिकान्तस्य"ले नकारको लोप भयो 'क्रोष्टा' सिद्ध भयो ।

**क्रोष्टारौ-** क्रोष्टु शब्ददेखि औ आयो, औलाई सर्वनामस्थान संज्ञा भएपछि पूर्ववत् तृज्वद्भाव भयो, 'क्रोष्टृ+औ' भयो । ऋकारका स्थानमा "ऋतो ङिसर्वनाम०"ले "उरण् रपरः"लाएर अर्गुण भयो, 'क्रोष्टर्+औ' भयो "अप्तृन्तृच्०"ले उपधाको दीर्घ भयो 'क्रोष्टारौ' सिद्ध भयो ।

**क्रोष्टारः-** क्रोष्टु शब्ददेखि जस् आयो, 'क्रोष्टु+अस्' भयो, पूर्ववत् सर्वनामस्थानसंज्ञा, तृज्वद्भाव, अर्गुण, उपधादीर्घ भएपछि 'क्रोष्टारः' सिद्ध भयो ।

**क्रोष्टारम्-** क्रोष्टु शब्ददेखि अम् आयो, पूर्ववत् अम्को सर्वनामस्थान संज्ञा क्रोष्टुको तृज्वद्भाव, गुण, उपधादीर्घ भएपछि 'क्रोष्टारम्' सिद्ध भयो ।

**क्रोष्टारौ-** क्रोष्टु शब्ददेखि औट् आयो, 'क्रोष्टु+औ' भयो, सर्वनामस्थानसंज्ञा, तृज्वद्भाव, गुण, उपधादीर्घ पूर्ववत् भयो 'क्रोष्टारौ' सिद्ध भयो ।

**क्रोष्टून्-** क्रोष्टु शब्ददेखि शस् आयो, 'क्रोष्टु+अस्' भयो, सर्वनामस्थान पर छैन र तृज्वद्भाव भएन, 'क्रोष्टु+अस्' यहाँ यण्लाई बाधेर "प्रथमयोः०"ले पूर्वसवर्णदीर्घ भयो "तस्माच्छसो नः पुंसि"ले सकारका स्थानमा नकार भयो 'क्रोष्टून्' सिद्ध भयो ।

**२०६. विभाषा तृतीयादिष्वचि ७ । १ । ९७ ॥**

अजादिषु तृतीयादिषु क्रोष्टुर्वा तृज्वत्। क्रोष्ट्रा। क्रोष्ट्रे ॥

**२०७. ऋत उत् ६ । १ । १११ ॥**

ऋतो ङसिङसोरति उदेकादेशः। रपरः॥

**२०८. रात्सस्य ८ । २ । २४ ॥**

रेफात्संयोगान्तस्य सस्यैव लोपो नान्यस्य ।रस्य विसर्गः। क्रोष्टुः २। क्रोष्टोः २।

---

**विभाषेति-** अच् आदिमा हुने [41] तृतीया आदि विभक्ति पर भएमा क्रोष्टुशब्द विकल्पले तृच् प्रत्ययान्त जस्तो होस्।

**क्रोष्ट्रा/क्रोष्टुना-** क्रोष्टु शब्ददेखि तृतीया विभक्तिको एकवचन टा आयो, 'क्रोष्टु+आ' भयो, "विभाषा तृतीयाादिष्वचि"ले तृतीयादि विभक्ति टा पर छ र विकल्पले तृज्वद्भाव भयो 'क्रोष्टृ+आ' भयो, "इको यणचि"ले यण् भयो, 'क्रोष्ट्रा' सिद्ध भयो। तृज्वद् भाव नभएको पक्षमा 'क्रोष्टु+आ' यहाँ क्रोष्टुलाई "शेषो घ्यसखि"ले घिसंज्ञा भयो, 'आङो नाऽस्त्रियाम्ले' 'टा'का स्थानमा ना आदेश भयो 'क्रोष्टुना' सिद्ध भयो।

**क्रोष्ट्रे/क्रोष्टवे-** क्रोष्टु शब्ददेखि चतुर्थीको एकवचन ङे आयो, 'क्रोष्टु+ए' भयो, "विभाषा तृतीयादिष्वचि"ले वैकल्पिक तृज्वद्भाव भयो, 'क्रोष्टृ+ए' भयो "इको यणचि"ले यण् भयो 'क्रोष्ट्रे' सिद्ध भयो। तृज्वद्भाव नभएको पक्षमा 'क्रोष्टु+ए' यहाँ क्रोष्टुलाई घिसंज्ञा भयो "घेर्ङिति" ले गुण भएर क्रोष्टुका उकारको स्थानमा ओकार भयो, अव् आदेश भयो 'क्रोष्टवे' यो रूप सिद्ध भयो।

**ऋत उदिति-** ऋकारान्त अङ्गदेखि ङसि र ङस्सम्बन्धी ह्रस्व अकार पर भएमा पूर्व र परका स्थानमा ह्रस्व उकार एकादेश होस्।

**रपर इति-** यो उकार एकादेश ऋकारका स्थानमा प्राप्त भएको अण् हुनाले "उरण् रपरः" यो सूत्रले रेफ र लकार पर हुन्छ, अर्थात् उर् उल् यस्तो हुन्छ।

**रात्सस्येति-**रेफदेखि पर रहेका संयोगान्त वर्णको लोप हुन्छ भने सकारको मात्र लोप होस् अरूको नहोस्। यो सूत्रले सकारको लोप हुन्छ। रेफको विसर्ग हुन्छ। यो नियामक सूत्र हो। यो सूत्रले "संयोगान्तस्य लोपः"लाई रेफदेखि पर रहेका संयोगान्त वर्णको लोप हुन्छ भने सकारको मात्र होस्" भनेर नियम गर्छ। 'क्रोष्टुर्+स्' यहाँ रेफ देखि नै पर रहेको संयोगान्त सकार छ, र लोप हुन्छ। संयोगान्त वर्ण सकार बाहेक अरू वर्ण भएमा त्यसको लोप हुन्न। जस्तै 'उर्क्' यहाँ लोप हुँदैन।

**क्रोष्टुः/क्रोष्टोः-** क्रोष्टु शब्ददेखि पञ्चमीको एकवचन ङसि आयो, 'क्रोष्टु+अस्' भयो पूर्ववत् तृज्वद्भाव विकल्पले भयो, 'क्रोष्टृ+अस्' भयो। "ऋत उत्"ले ङसिसम्बन्धी ह्रस्व अकार पर छ र क्रोष्टृका ऋकारका स्थानमा र अस्का अकारका स्थानमा उकार एकादेश गर्दा "उरण् रपरः" लाएर उर् उल् यस्तो प्रवृत्ति भयो। उर् उल् दुवै आदेश पायो, आन्तरतम्यात् उर् आदेश भयो, 'क्रोष्टुर्+स्' भयो "संयोगान्तस्य लोपः"ले "अलोऽन्त्यस्य" लाएर संयोगान्त दन्त्य सकारको लोप पाएकोमा "रात्सस्य"ले रेफदेखि पर रहेका संयोगान्त वर्णको लोप हुन्छ भने दन्त्य सकारको मात्र लोप् होस् भन्ने नियम गरेपछि यहाँ दन्त्य सकार नै छ र लोप भयो, रेफको विसर्ग भयो, 'क्रोष्टुः'

---

४१ अच् आदिमा हुने तृतीयादिविभक्ति टा, ङे, ङसि, ङस्, ओस्, आम्, र ङि हुन् भन्ने कुरा पाठकलाई थाहा नै छ।

**वा.**(नुमचिरतृज्वद्भावेभ्यो नुट् पूर्वविप्रतिषेधेन) । क्रोष्टूनाम् । क्रोष्टरि । पक्षे हलादौ च शम्भुवत् ॥

सिद्ध भयो । तृज्वद् भाव नभएको पक्षमा 'क्रोष्टु+अस्' यस्तै छ यहाँ क्रोष्टुलाई घिसंज्ञा भयो, "घेर्ङिति" ले गुण "ङसिङसोश्च"ले पूर्वरूप भयो, 'कोष्टोस्' भयो, रुत्व विसर्ग भयो, 'क्रोष्टोः' सिद्ध भयो । षष्ठीको एकवचनमा पनि यही प्रक्रियाद्वारा 'क्रोष्टुः' 'क्रोष्टोः' दुई रूप हुन्छन् ।

**क्रोष्ट्रोः / क्रोष्ट्वोः**– क्रोष्टु शब्ददेखि षष्ठीको द्विवचन ओस् आयो, पूर्ववत् तृज्वद्भाव भएपछि यण् भयो 'क्रोष्ट्रोः' सिद्ध भयो । (तृज्वद्भाव नभएमा 'क्रोष्टु+ओस्' यहाँ यण् भयो, 'क्रोष्ट्वोः' सिद्ध भयो ।

**नुमचिरेति**– नुम् आगम, "अचि र ऋतः"ले गर्ने रेफादेश, तृज्वद्भाव यी भन्दा [४२] पूर्वका विप्रतिषेधले नुट् आगम होस् । "विप्रतिषेधे परं कार्यम्" यस सूत्रका दुवै व्याख्या छन् । "विप्रतिषेधे परं कार्यम्" "विप्रतिषेधेऽपरं कार्यम्" यहाँ द्वितीयव्याख्या अनुसार पूर्वले परलाई बाध्दछ । "ह्रस्वनद्यापो नुट्"ले नुम् गर्ने सूत्र "इकोऽचि विभक्तौ"लाई 'वारीणाम्' मा बाध्दछ । अच् पर भएमा रेफ गर्ने सूत्र "अचिर ऋतः" लाई 'तिसृणाम्'मा बाध्दछ । तृज्वद्भाव गर्ने सूत्र "विभाषा तृतीयादिष्वचि"लाई 'क्रोष्टूनाम्'मा बाध्दछ ।

**क्रोष्टूनाम्**– क्रोष्टु शब्ददेखि षष्ठीको बहुवचन आम् आयो, 'क्रोष्टु+आम्' भयो 'कोष्टु+आम्' यहाँ "विभाषा तृतीयादिष्वचि"ले तृज्वद्भाव पायो । "ह्रस्वनद्यापो नुट्" ले नुट् पनि पायो, "विप्रतिषेधे परं कार्यम्" लाएर परत्वात् "विभाषा तृतीयादिष्वचि"ले नुट्लाई बाधेर तृज्वद्भाव पायो । पाएमा "नुमचिरतृज्वद्भावे०" यस वार्तिकले पूर्वका विप्रतिषेधले नुट् हुन्छ भनेकोले "ह्रस्वनद्यापो नुट्"ले नुट् आगम भयो, "नामि" ले दीर्घ भयो 'क्रोष्टूनाम्' ।

**क्रोष्टरि / क्रोष्टौ**– क्रोष्टु शब्ददेखि ङि आयो, 'क्रोष्टु+इ' भयो "विभाषा तृतीयादिष्वचि"ले वैकल्पिक तृज्वद्भाव भयो, "ऋतो ङिसर्वनामस्थानयोः"ले "उरण् रपरः" लगाएर अर्गुण भयो 'क्रोष्टरि' सिद्ध भयो । तृज्वद्भाव नभएमा 'क्रोष्टु+इ' यस्तै छ क्रोष्टुको घिसंज्ञा भएपछि "अच्च घेः"ले क्रोष्टुका उकारका स्थानमा अकार, ङिका स्थानमा औ भयो, वृद्धि भयो, 'क्रोष्टौ' सिद्ध भयो ।

**पक्षे हलादौ चेति**– तृज्वद्भाव नभएको पक्षमा र हलादि विभक्ति पर भएमा क्रोष्टु शब्द शम्भुशब्द जस्तै हुन्छ । अजादि विभक्ति पर भएमा तृज्वद्भाव भएको पक्षका र नभएको पक्षका रूपहरूको साधनप्रक्रिया संक्षेपमा दिइयो । हलादि विभक्ति पर भएमा विशेषकार्य छैन । साधनप्रक्रिया आफैं ऊह गर्नु ।

क्रोष्टुशब्दका रूप–

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र. | क्रोष्टा | क्रोष्टारौ | क्रोष्टारः । |
| द्वि. | क्रोष्टारम् | क्रोष्टारौ | क्रोष्टून् । |
| तृ. | क्रोष्ट्रा, क्रोष्टुना, | क्रोष्टुभ्याम् | क्रोष्टुभिः । |
| च. | क्रोष्ट्रे, क्रोष्टवे, | क्रोष्टुभ्याम् | क्रोष्टुभ्यः । |
| पं. | क्रोष्टुः, क्रोष्टोः, | क्रोष्टुभ्याम् | क्रोष्टुभ्यः । |
| ष. | क्रोष्टुः, क्रोष्टोः, | क्रोष्ट्रोः, क्रोष्ट्वोः | क्रोष्टूनाम् । |
| स. | क्रोष्टरि, क्रोष्टौ | क्रोष्ट्रोः, क्रोष्ट्वोः | क्रोष्टुषु |
| सं. | हे क्रोष्टो ! | हे क्रोष्टारौ ! | हे क्रोष्टारः ! |

४२ तुल्यबल भएका दुई शास्त्रको विरोधमा जो पर छ उही गर्नु भन्ने "विप्रतिषेधे परं कार्यम्" यो सूत्रले नियम गर्छ, तर नुम्, अच् पर भएमा हुने रेफ आदेश र तृज्वद् भाव गर्ने सूत्र पर र नुट् गर्ने सूत्र "ह्रस्वनद्यापः०" पूर्व भए पनि यसले यी सबैलाई बाध्दछ भन्ने तात्पर्य हो ।

हूहूः । हूह्वौ । हूह्वः । हूहूम् । हूहून् इत्यादि ॥ अतिचमूशब्दे तु नदीकार्य विशेषः । हे अतिचमु । अतिचम्वै । अतिचम्वाः ।

---

**दीर्घ ऊकारान्त शब्दहरू –**

**हूहूः**– गन्धर्व विशेष हूहूः– हूहूशब्ददेखि प्रथमाको एकवचन सु आयो, हूहूस् भयो रुत्व, विसर्ग भयो 'हूहूः'

**हूह्वौ**– हूहू शब्ददेखि प्रथमाको द्विवचन औ आयो, 'हूहू+औ' भयो यण्लाई बाधेर "प्रथमयोः०" ले पूर्वसवर्णदीर्घ पाएकोमा "दीर्घाज्जसि च" ले निषेध भयो, "इको यणचि"ले यण् भयो 'हुह्वौ' सिद्ध भयो।

**हूह्वः**– हूहू शब्ददेखि जस् आयो, 'हूहू+अस्' भयो । यण्लाई बाधेर पाएको पूर्वसवर्णदीर्घको "दीर्घज्जसि च"ले निषेध भएपछि पुनः यण् भयो, रुत्व, विसर्ग भयो 'हूह्वः' सिद्ध भयो ।

**हूहूम्**– हूहू शब्ददेखि द्वितीयाको द्विवचन अम् आयो, 'हूहू+अम्' भयो । यहाँ "इको यणचि"ले यण् पायो त्यसलाई बाधेर "अमि पूर्वः"ले पूर्वरूप भयो 'हूहूम्' सिद्ध भयो । द्विवचन औट्मा औमा जस्तै प्रक्रिया भएर 'हूह्वौ' रूप हुन्छ ।

**हूहून्**– हूहू शब्ददेखि द्वितीयाको बहुवचन शस् आयो, 'हूहू+अस्' भयो यण्लाई बाधेर "प्रथमयोः०"ले पूर्वसवर्णदीर्घ भयो "तस्माच्छसो नः पुंसि"ले सकारका स्थानमा नकार भयो 'हूहून्' ।

अब बाँकी अजादि विभक्ति पर भएमा "इको यणचि"ले यण् हुन्छ जहाँ जहाँ अन्तमा सकार छ, त्यसको रुत्व, विसर्ग हुन्छ । हलादि विभक्ति पर भएमा पनि अन्तमा सकार छ भने रुत्व, विसर्ग हुन्छ । अरू विशेषप्रक्रिया छैन ।

चमूम् अतिक्रान्तः=अतिचमूः (सैन्यलाई अतिक्रमण गर्ने व्यक्ति) सुमा 'अतिचमूः' हुन्छ । **अतिचमूशब्दे त्विति**– अतिचमू शब्दमा त हूहू शब्दमा भन्दा विशेष नदीसंज्ञाको कार्य छ । किनभने चमू शब्द नित्यस्त्रीलिङ्गमा वर्तमान छ । इयङ् उवङ्को स्थानी नभएकोले "नेयङुवङ् स्थानावस्त्री" ले नदीसंज्ञा निषेध हुँदैन, अतः "प्रथमलिङ्गग्रहणं च" यो वार्तिक लगाएर "यू स्त्र्याख्यौ नदी" ले नदी संज्ञा हुन्छ । यो शब्द उवङ्को स्थानी नहुनाले नदीसंज्ञा निषेध हुन्न ।

नदीसंज्ञाका विशेष कार्य सम्बुद्धिमा ह्रस्व, ङे, ङसि र ङस्मा आट् आगम, आम्मा नुट्, ङिका स्थानमा आम् आदेश र आट् आगम यति छन् । मूलमा लेखिएका रूपहरूको सिद्धिप्रक्रिया संक्षिप्तमा तल दिइन्छ–

**हे अतिचमु**– अतिचमू शब्द घटक चमूशब्द नित्यस्त्रीलिङ्गी हुनाले "प्रथमलिङ्ग ग्रहणं च" लगाएर नदीसंज्ञा भएपछि संबोधन अर्थमा प्रथमाको एकवचन सु आयो, 'अतिचमू+सु', भयो सुलाई संबुद्धिसंज्ञा भए पछि अनुबन्ध लोप भयो 'अतिचमू+स्' भयो, "अम्बार्थनद्योर्ह्रस्वः"ले अतिचमूका ऊकारका स्थानमा ह्रस्व उकार भयो, 'अतिचमु+स्' भयो, "एङ्ह्रस्वात्संबुद्धेः"ले सुको लोप भयो, हे शब्दको पूर्वप्रयोग भयो, 'हे अतिचमु' सिद्ध भयो ।

**अतिचम्वै**– अतिचमू-शब्द-घटक चमूशब्दलाई पूर्ववत् नदी संज्ञा भएपछि त्यसदेखि ङे आयो 'अतिचमू+ए' भयो 'आण्नद्याः'ले ङेको आट् आगम "आटश्च"ले वृद्धि भएर 'अतिचमू+ऐ' भएपछि "इको यणचि" ले यण् भयो 'अतिचम्वै' सिद्ध भयो ।

**अतिचम्वाः**– अतिचमू शब्दान्तर्गत चमू शब्दलाई पूर्ववत् नदीसंज्ञा भएकै छ त्यसदेखि ङसि आयो, 'अतिचमू+अस्' भयो अस्को "आण्नद्याः"ले आट् आगम भयो, "आटश्च"ले वृद्धि भयो, 'अतिचमू+आस्' भयो, "इको यणचि"ले यण् भयो, रुत्व, विसर्ग भयो, 'अतिचम्वाः' सिद्ध भयो । षष्ठीको एकवचन ङस्मा पनि यही प्रक्रियाद्वारा 'अतिचम्वाः' सिद्ध भयो ।

---

अतिचमूनाम् ॥ खलपूः ॥

**२०९. ओः सुपि ६ । ४ । ८३ ॥**

धात्ववयवसंयोगपूर्वो न भवति य उवर्णस्तदन्तो यो धातुस्तदन्तस्यानेकाचोऽङ्गस्य यण् स्यादचि सुपि । खलप्वौ । खलप्वः । एवं सुल्वादयः ॥ स्वभूः । स्वभुवौ ॥

---

**अतिचमूनाम्-** अतिचमू-शब्द-घटक चमूशब्दलाई नदी संज्ञा भएकै छ अतिचमू-शब्ददेखि आम् आयो, 'अतिचमू+आम्' भयो, आम्‌को "ह्रस्वनद्यापो नुट्"ले नुट् भयो, "समुद्रे पर्जन्यवल्लक्षणप्रवृत्तिः" लगाएर "नामि" ले अतिचमूका दीर्घ ऊकारका स्थानमा दीर्घ भयो 'अतिचमूनाम्' सिद्ध भयो ।

**अतिचम्वाम्-** नदीसंज्ञा भएकै छ । अतिचमू शब्ददेखि सप्तमीको एकवचन ङि आयो, ङि का स्थानमा "ङेराम् नद्याम्नीभ्यः"ले आम् भयो 'अतिचमू+आम्' भयो, यहाँ "ह्रस्वनद्यापो नुट्"लाई बाधेर "आण्नद्याः" ले आट् आगम भयो, "आटश्च" ले वृद्धि भयो, अतिचमू+आम् भयो पुनः नुट् पाएकोमा "सकृद्गतौ विप्रतिषेधे०" यस परिभाषाले निषेध भयो, यण् भयो 'अतिचम्वाम्' सिद्ध भयो । बाँकी सबै रूप हूहूशब्दमा जस्तै हुन्छन् प्रक्रिया पनि उस्तै हो ।

**खलपूः-** (खलो पोतने व्यक्ति) खलपूशब्ददेखि प्रथमाको एकवच सु आयो, 'खलपू+स्' भयो सकारको रुत्व विसर्ग भयो 'खलपूः' ।

**ओः सुपीति-** धातुको अवयव संयोगपूर्वमा नहुने जो उवर्ण त्यो अन्तमा हुने जो धातु तदन्त अनेकाच् अङ्गका स्थानमा यण् होस् अच् आदिमा हुने सुप्‌विभक्ति पर भएमा ।

**खलप्वौ-** खलपू शब्ददेखि प्रथमाको एकवचन औ आयो, 'खलपू+औ' भयो । यहाँ "इको यणचि"ले पाएको यण्‌लाई बाधेर "प्रथमयोः०"ले पूर्वसवर्णदीर्घ पाएकोमा "दीर्घाज्जसि च"ले निषेध भयो । पुनः पाएको यण्‌लाई बाधेर "अचि श्नुधातुभ्रुवां०"ले इयङ् उवङ् पायो त्यसलाई बाधेर "ओः सुपि" ले धातुको अवयव संयोगपूर्वमा नहुने उवर्ण पूको ऊकार छ तदन्त धातु पू भयो, तदन्त अनेकाच अङ्ग 'खलपू' छ, अजादि सुप् विभक्ति पर छ 'औ' र "अलोऽन्त्यस्य" लाएर ऊकारका स्थानमा यण् भयो 'खलप्वौ' सिद्ध भयो ।

**खलप्वः-** खलपू शब्ददेखि प्रथमाको बहुवचन जस् आयो, 'खलपू+अस्' भयो यहाँ "इको यणचि"ले यण् पायो, त्यसलाई बाधेर "प्रथमयोः पूर्वसवर्णः" ले पूर्वसवर्णदीर्घ पाएको "दीर्घाज्जसि च" ले निषेध भयो, पुनः यण् पायो, यण्‌लाई बाधेर "अचि श्नुधातुभ्रुवां०"ले इयङ् उवङ् पायो त्यसलाई बाधेर "ओः सुपि" ले यण् भयो, 'खलप्वः' सिद्ध भयो ।

**खलप्वम्-** खलपूशब्ददेखि द्वितीयाको एकवचन अम् आयो, 'खलपू+अम्' भएपछि "इकोयणचि"लाई बाधेर पूर्वसवर्ण दीर्घ पायो त्यसलाई बाधेर "अमि पूर्वः"ले पूर्व पाएको रूपलाई बाधेर इयङ् उवङ् पायो त्यसलाई बाधेर "ओः सुपि"ले यण् भयो, 'खलप्वम्' सिद्ध भयो । औट्‌मा औको जस्तै प्रक्रिया हुन्छ । शस्‌मा "प्रथमयोः पूर्वसवर्णः"लाई बाधेर "ओः सुपि"ले यण् हुँदा 'खलप्वः' हुन्छ । यस्तै प्रकारले अजादि विभक्तिमा "ओः सुपि"ले यण् हुन्छ । हलादि विभक्तिमा विशेष कार्य केही हुँदैन ।

**एवमिति-** यस्तै किसिमले सुलू आदि शब्द पनि जान्नू ।

**स्वभूः** (आफै उत्पन्न हुने विष्णु) स्वभू शब्ददेखि प्रथमाको एक वचन सु आयो, 'स्वभू+स्' भयो सकारको रुत्व, विसर्ग भयो 'स्वभूः' ।

**स्वभुवौ-** स्वभूशब्ददेखि औ आयो, 'स्वभू+औ' भयो । 'स्वभू+औ' यहाँ "इको यणचि" ले

स्वभुवः । वर्षाभूः ॥

**२१०. वर्षाभ्वश्च ६ । ४ । ८४ ॥**

अस्य यण् स्यादचि सुपि । वर्षाभ्वावित्यादि ॥ दृन्भूः । (दृन्करपुनः पूर्वस्य भूवो यण् वक्तव्यः) । दृन्भ्वौ ।

---

यण् पायो, त्यसलाई बाधेर "प्रथमयोः पूर्वसवर्णः"ले पूर्वसवर्ण दीर्घ पायो, "दीर्घाज्जसि च" ले निषेध भयो, पुनः यण् पायो, त्यसलाई बाधेर "अचिश्नुधातुभ्रुवां" ले इयङ् उवङ् आदेश पायो, त्यसलाई बाधेर "ओः सुपि"ले यण् पायो त्यसको "न भूसुधियोः" ले निषेध भयो, पुनः "अचि श्नुधातुभ्रुवां०" ले उवङ् भयो 'स्वभुव्+औ', 'स्वभुवौ' सिद्ध भयो ।

**स्वभुवः-** स्वभूशब्ददेखि जस् आयो, 'स्वभू+अस्' भयो सम्पूर्ण बाध्यबाधकभाव पूर्ववत् (औमा जस्तै) भयो र अन्तमा उवङ् भयो, 'स्वभुवस्' भयो, रुत्व, विसर्ग भयो, 'स्वभुवः' सिद्ध भयो । यस्तै प्रकारले अच् आदिमा हुने विभक्तिमा सर्वत्र उवङ् हुन्छ । हलादि विभक्तिमा विशेष प्रक्रिया छैन । सुप्मा सुका सकारको "आदेश प्रत्यययोः"ले षत्व हुन्छ । रूपतालिका तल दिइन्छ ।

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| प्र. | स्वभूः | स्वभुवौ | स्वभुवः | द्वि. | स्वभुवम् | स्वभुवौ | स्वभुवः |
| तृ. | स्वभुवा | स्वभूभ्याम् | स्वभूभिः | च. | स्वभुवे | स्वभूभ्याम् | स्वभूभ्यः |
| पं. | स्वभुवः | स्वभूभ्याम् | स्वभूभ्यः | ष. | स्वभुवः | स्वभुवोः | स्वभुवाम् |
| स. | स्वभुवि | स्वभुवोः | स्वभूषु | सं. | हे स्वभूः ! | हे स्वभुवौ ! | हे स्वभुवः ! |

**वर्षाभूः-** (वर्षामा उत्पन्न हुने भ्यागुता आदि) वर्षाभू शब्ददेखि सु आयो, **'वर्षाभू+स्'** भयो, सकारको रुत्व, विसर्ग भयो 'वर्षाभूः' ।

**वर्षाभ्व इति-** वर्षाभूशब्दका स्थानमा यण् होस् अच् आदिमा हुने सुप् विभक्ति पर भएमा ।

**वर्षाभ्वौ-** वर्षाभू शब्ददेखि औ आयो, 'वर्षाभू+औ' भयो "इको यणचि"ले यण् पायो त्यसलाई बाधेर "प्रथमयोः०"ले पूर्वसवर्ण दीर्घ पाएमा "दीर्घज्जसि च"ले निषेध भयो, पुनः यण् पायो, त्यसलाई बाधेर "अचि श्नु०"ले इयङ् उवङ् पायो, त्यसलाई बाधेर "ओः सुपि"ले यण् पायो त्यसको "न भूसुधियोः" ले निषेध भयो, पुनः इयङ् उवङ् पायो, त्यसलाई बाधेर "वर्षाभ्वश्च"ले वर्षाभू जम्मैका स्थानमा यण् पायो, "अलोऽन्त्यस्य" लाएर अन्त्य अल् ऊकारका स्थानमा यण् व् भयो, "वर्षाभ्वौ" सिद्ध भयो ।

यस्तै प्रकारले अरू अजादि विभक्ति पर भएमा पनि यण् हुन्छ । हलादि विभक्ति पर भएमा विशेष कार्य हुँदैन । अतः खलपू शब्दका जस्तै वर्षाभू शब्दका रूप हुन्छन् ।

**(वा.) दृन्करेति-** दृन् शब्द, कर शब्द, पुनर् शब्द पूर्वमा हुने भूधातुका स्थानमा यण् होस् भन्नु ।

[४३]**दृन्भूः-** दृन्भू शब्ददेखि सु आयो, रुत्व, विसर्ग भयो 'दृन्भूः' ।

**दृन्भ्वौ-** दृन्भू शब्ददेखि औ आयो, 'दृन्भू+औ' भयो दृन्भू+औ यहाँ "इको यणचि"लाई बाधेर "प्रथमयोः०"ले पूर्व सवर्ण दीर्घ पाएकोमा "दीर्घाज्जसि च"ले निषेध भयो, पुनः यण् पायो त्यसलाई बाधेर "अचि श्नुधातुभ्रुवां०"ले इयङ् उवङ् पायो, त्यसलाई बाधेर "ओः सुपि"ले यण्

---

४३ दृन्भूः सर्पो वज्रश्च । 'दृन्भूः पन्नगसर्पयोः' इति विश्वः ।

एवं करभूः ॥ धाता । हे धातः ! । धातारौ ।

---

पाएको "न भूसुधियोः"ले निषेध भयो, पुनः "अचि श्नुधातु०"ले इयङ् उवङ् पायो, त्यसलाई बाधेर "दृन्करपुनःपूर्वस्य भुवो यण् वक्तव्यः" यस वार्तिकले "अलोऽन्त्यस्य" लाएर दृन्भूको ऊकारका स्थानमा यण्-व् भयो, 'दृन्भ्व्+औ' भयो, वर्णमेलन भयो, 'दृन्भ्वौ' सिद्ध भयो । यस्तै प्रक्रिया अजादि विभक्तिमा सर्वत्र हुन्छ । हलादि विभक्तिमा विशेष कार्य हुँदैन । यसका रूप खलपू शब्द वा वर्षाभूशब्दका जस्तै हुन्छन् ।

**एवमिति-** यस्तै प्रकारले करभू (नङ) शब्दका रूप पनि जान्नु । पुनर्भूशब्दका रूप पनि करभूशब्दका जस्तै हुन्छन् । करभूशब्द र पुनर्भूशब्दमा 'दृन्करपुनः पूर्वस्य०' यो वार्तिकले यण् हुन्छ । पुनर्भवति यस विग्रहमा बारम्बार पलाइरहने औषधिविशेषलाई कहँदा यो शब्द पुंलिङ्गमा रहन्छ ।[४४] दुई पटक विवाह भएकी स्त्रीलाई कहँदा स्त्रीलिङ्गमा रहन्छ ।

**ऋकारान्त शब्दहरू-**

**धातृ-** (धारण-पोषण-कर्ता ब्रह्मा) दधाति (धारण गर्छन्), यस अर्थमा धा,धातुदेखि तृच्प्रत्यय भए धातृशब्द बन्दछ ।

**धाता-** धातृशब्ददेखि प्रथमाको एकवचन सु आयो, 'धातृ+स्' भयो "ऋतो ङि सर्वनामस्थानयोः"ले **गुण** पायो त्यसलाई बाधेर "ऋदुशनस्पुरुदंसोऽनेहसां च"ले अनङ् भयो, अनुबन्धलोप भयो, 'अन्' भयो, अन् यो आदेश "अलोऽन्त्यस्य"ले अन्त्य अल् ऋकारका स्थानमा पाएमा बाधेर "अनेकाल् शित्सर्वस्य"ले धातृ सबैका स्थानमा पायो त्यसलाई बाधेर "ङिच्च"ले अन्त्य अल्-ऋकारका स्थानमा 'अन्' भयो, 'धातन्+स्' भयो, 'स्'लाई पर राखेर 'धातन्'का अकारलाई "अलोऽन्त्यात् पूर्व उपधा"ले उपधा संज्ञा भयो, 'धातन्+स्' यहाँ तृच् प्रत्ययान्त शब्दको उपधा-'धातन्'का अकारका स्थानमा संबुद्धिभिन्न सर्वनामस्थान सु पर छ र "अप्तृन्तृच्०"ले दीर्घ हुँदा आकार भयो 'धातान्+स्' भयो 'स्'लाई "अपृक्त एकाल् प्रत्ययः"ले अपृक्तसंज्ञा भयो स्कारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, 'धातान्' भयो । धातान् यसलाई "प्रत्ययलोपे०" लगाएर "सुप्तिङन्तं पदम्"ले पदसंज्ञा भयो "न लोपः प्रातिपदिकान्तस्य"ले नकारको लोप भयो 'धाता' यो रूप सिद्ध भयो ।

**हे धातः-** धातृ शब्ददेखि संबोधन अर्थमा प्रथमाको एकवचन सु आयो, संबुद्धि संज्ञा भयो, अनुबन्धलोप भयो 'धातृ+स्' भयो, 'धातृ+स्' यहाँ "ऋतो ङिसर्वनामस्थानयोः"ले अर्‌गुण भयो, 'धातर+स्' भयो, संबुद्धिभिन्न सर्वनामस्थान पर भएमा भनेको हुनाले "अप्तृन्तृच्०"ले दीर्घ भएन । सकारको "रात्सस्य" लगाएर संयोगान्तलोप भयो, रेफको विसर्ग भयो, हेशब्दको पूर्वप्रयोग भयो, 'हे धातः' सिद्ध भयो । संबोधनको औ जस्मा "अप्तृन्तृच्०"ले दीर्घ हुने हुनाले हे धातारौ, हे धातारः, यस्ता रूप हुन्छन् ।

**धातारौ-** धातृशब्ददेखि प्रथमाको द्विवचन 'औ' आयो, 'धातृ+औ' भयो, 'धातृ+औ'मा "इको यणचि"ले यण् पायो त्यसलाई बाधेर "प्रथमयोः०"ले पूर्वसवर्णदीर्घ पायो, त्यसलाई बाधेर "ऋतो ङिसर्वनामस्थानयोः"ले धातृका ऋकारका स्थानमा गुण् हुँदा "उरण् रपरः" लगाएर अर्‌गुण भयो धातर्+औ भयो "अपतृन्तृच्०"ले धातर्‌को उपधा-अकारका स्थानमा दीर्घ भयो, 'धातारौ' सिद्ध भयो ।

---

४४ "पुनर्भूर्दीधिषूरूढा द्विः" (अमरकोश) । पुनर्भूः श्वेतपुनर्नवा इति (आयुर्वेद निघण्टु)

धातारः । **वा.**(ऋवर्णान्नस्य णत्वं वाच्यम्) धातॄणाम् । एवं नप्त्रादयः ॥ पिता । अप्तृन्निति सूत्रे नप्त्रादिग्रहणं व्युत्पत्तिपक्षे नियमार्थम् । तेनेह न ।

---

**धातारः-** धातृ शब्ददेखि प्रथमाको बहुवचन जस् आयो, 'धातृ+अस्' भयो, औमा जस्तै बाध्यबाधक भाव भएपछि अन्तमा "ऋतो ङिसर्वनामस्थानयोः"ले धातृका ऋकारका स्थानमा अर् गुण भयो, "अपृतृन्तृच्०"ले उपधाका स्थानमा दीर्घ भयो, 'धातारस्' भयो, सकारको रुत्व, विसर्ग भयो, 'धातारः' सिद्ध भयो ।

**धातारम्-** धातृशब्ददेखि अम् आयो, 'धातृ+अम्' भयो, यहाँ "इको यणचि"लाई बाधेर पूर्वसवर्णदीर्घ पायो, त्यसलाई बाधेर "अमि पूर्वः"ले पूर्वरूप पायो, त्यसलाई बाधेर "ऋतो ङिसर्वनामस्थानयोः"ले अर्गुण भयो "अप्तृन्तृच्०"ले दीर्घ भयो 'धातारम्' सिद्ध भयो ।

**धातारौ-** औट्मा औमा जस्तै प्रक्रिया भयो, 'धातारौ' सिद्ध भयो । शस्मा "ऋतो ङि०"ले सर्वनामस्थान पर न भएकोले गुण भएन, यण्लाई बाधेर पूर्वसवर्णदीर्घ भयो, सकारको नकार भयो, 'धातॄन्' ।

टा आदि आम् बाहेक अजादिविभक्ति पर भएमा, कोष्टु शब्दको तृज्वद्भाव पक्षमा जस्तो प्रक्रिया हुन्छ, त्यही प्रक्रिया धातृशब्दमा पनि हुन्छ । आम्मा भिन्न प्रक्रिया छ, हलादिविभक्तिमा विशेष प्रक्रिया छैन ।

**(वा.) ऋवर्णादिति-** ऋवर्णदेखि पररहेका नकारका स्थानमा णकार होस् भन्नु ।

**धातॄणाम्-** धातृशब्ददेखि षष्ठीको बहुवचन आम् आयो, 'धातृ+आम्' भयो "इकोयणचि" ले यण् पायो, त्यसलाई बाधेर आम्को "ह्रस्वनद्यापो नुट्"ले नुट् आगम भयो "नामि"ले धातृका ऋकारका स्थानमा दीर्घ भयो, 'धातॄ+नाम्' भयो, यहाँ "ऋवर्णान्नस्य णत्वं वाच्यम्" यस वार्तिकले धातृका ऋकारदेखि पर रहेको नाम्को नकारका स्थानमा णकार भयो 'धातॄणाम्' सिद्ध भयो ।

**धातृ शब्दका रूपहरू**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| प्र. | धाता | धातारौ | धातारः | द्वि. | धातारम् | धातारौ | धातॄन् |
| तृ. | धात्रा | धातृभ्याम् | धातृभिः | च. | धात्रे | धातृभ्याम् | धातृभ्यः |
| प. | धातुः | धातृभ्याम् | धातृभ्यः | ष. | धातुः | धात्रोः | धातॄणाम् |
| स. | धातरि | धात्रोः | धातृषु | सं. | हे धातः ! | हे धातारौ ! | हे धातारः ! |

यस्तै प्रकारले हर्तृ, गन्तृ, कर्तृ, भर्तृ, धर्तृ, भोक्तृ आदि तृन् तृच् प्रत्ययान्त शब्दका रूप पनि जान्नु ।

**पिता-** पितृशब्ददेखि प्रथमाको एकवचन सु आयो, 'पितृ+स्' भयो, "ऋतो ङि सर्वनामस्थाणयोः" ले गुण पायो त्यसलाई बाधेर "ऋदुनस्पुरुदंसो०"ले अनङ् भयो, 'पितन् स्' भयो, यहाँ 'स्'यो सर्वनाम स्थान पर छ र नान्त उपधा पितन्का अकारका स्थानमा "सर्वनामस्थाने चासंबुद्धौ" दीर्घ भयो, 'पितान्+स्' भयो । सकारको "हल्ङयाब्भ्यो०"ले लोप भयो, पितान्लाई "प्रत्ययलोपे०" लगाएर पदसंज्ञा भयो, नकारको "नलोपः प्रातिपदिकान्तस्य"ले लोप भयो, 'पिता' सिद्ध भयो ।

**अप्तृन्निति सूत्र इति-** "अप्तृन्तृच्०" यो सूत्रमा नप्तृ आदि शब्दको ग्रहण गर्नु व्युत्पन्नपक्षमा नियमका निमित्त हो । त्यस कारणले पितरः पितरौ यहाँ दीर्घ हुँदैन । यो पङ्क्तिको तात्पर्य यो हो- "अप्तृन्तृच्०" यो सूत्रमा उल्लिखित स्वसृ, नप्तृ, नेष्टृ, त्वष्टृ, क्षतृ, होतृ, पोतृ, प्रशास्तृ यी शव्द उणादिमा साधिएका हुन् । उणादिका विषयमा विद्वान्हरूको दुई मत छ । एकमत- उणादि शब्दलाई व्युत्पन्न मान्ने पक्षको । दोस्रो मत- उणादिशब्दलाई अव्युत्पन्न मान्ने पक्षको (१) व्युत्पत्तिपक्षमा उणादिशब्दमा पनि प्रकृति-प्रत्ययविभाग छ । यो मतमा माथि उल्लिखित नप्तृ

आदि शब्द तृन्, तृच् प्रत्ययान्त हुन् । यिनीहरू तृन्-तृजन्त भएपछि र सूत्रमा अप्तृन्तृच् भनिसकेपछि नप्तृ आदि शब्द पनि तृन्, तृजन्त नै हुनाले यिनीहरूको छुट्टै ग्रहण गर्नु परेन । स्वसृ शब्द तृन्तृजन्त नहुनाले त्यसको ग्रहण गर्नुपर्‍यो । सूत्र "अप्तृन्तृच्स्वसृणाम्" यस्तो पढे भैहाल्यो । अतः सूत्रमा नप्तृ आदि शब्दको ग्रहण गर्नु व्यर्थ भयो र "व्यर्थ सत् किञ्चिज्ज्ञापयति" अथवा "सिद्धे सत्यारभ्यमाणो विधिर्नियमाय भवति" व्यर्थ भए पछि केही कुरा ज्ञापन गर्दछ । अथवा सिद्ध छँदाछँदै आरम्भ गरिएको विधि नियमका लागि हुन्छ, भन्ने न्याय अनुसार के जनायो भने "उणादिनिष्पन्नानां तृन्तृच्प्रत्ययायान्तानां संज्ञा शब्दानामुपधायाश्चेद्दीर्घस्तर्हि नप्त्रादीनामेव" 'उणादिमा साधिएका तृन्-तृच्-प्रत्ययान्त संज्ञाशब्दहरूको दीर्घ हुन्छ भने नप्तृ आदि सात शब्दको मात्र होस्, उणादिमा साधिएका अरू तृन्-तृच्-प्रत्ययान्तशब्दको नहोस्' अतः ती सात शब्द बाहेक अरू उणादिमा साधिएका तृन्तृच् प्रत्ययान्त पितृ भ्रातृ जामातृ आदिका उपधाको दीर्घ भएन, पितरौ, भ्रातरौ, जामातरौ, इत्यादि रूप भए ।

(२) नप्तृ आदि शब्द प्रकृति-प्रत्ययविभागरहित हुन्, तृन्तृजन्त होइनन् भन्ने पक्षमा त "अप्तृनृतृच् स्वसृणाम्" यस्तो सूत्र पढेमा तृन्-तृजन्त नहुनाले नप्तृ आदिको दीर्घ नहुने भयो र आफ्नो अभीष्ट सिद्ध गर्न नप्तृ आदिको ग्रहण गर्नु आवश्यक नै भयो र यो सूत्रमा नप्तृ आदि शब्दको ग्रहण गर्नाले ती शब्दमा दीर्घ भयो र 'नप्तारौ' 'नेष्टारौ' आदि रूप भए । पितृ आदि शब्द नपत्रादि भित्र नपरेको हुनाले तिनीहरुको उपधादीर्घ भएन । पितरौ, भ्रातरौ आदि रूप भए ।

(३) अब यही कुरालाई उपर्युल्लिखित व्युत्पन्न पक्षमा प्रत्युदाहरण शैलीले प्रतिपादन गर्दा अप्तृन्नितिसूत्रे नप्त्रादिग्रहणं किम् ? "अप्तृन्तृच्स्वसृनप्तृनेष्टृ०" यो सूत्रमा नप्तृ आदिको ग्रहण किन गर्नु ? नगर्ने हो भने सूत्र "अप्तृन्तृच्स्वसृणाम्" यत्ति होला र सूत्रको अर्थ - "अप् शब्द, तृन्तृच्प्रत्ययान्त शब्द, स्वसृ शब्दका उपधाका स्थानमा दीर्घ होस् संवुद्धि भिन्न सर्वनामस्थान पर भएमा"- यस्तो होला, यस्तो अर्थ भए दोष जाला कहाँ ? पितरौ, मातरौ, भ्रातरौ इत्यादि ठाउँमा, यहीं पनि (यी तृन् तृच् प्रत्ययान्त शब्द हुनाले) दीर्घ भएर पितारौ, मातारौ, भ्रातारौ, आदि अनिष्ट रूप सिद्ध होलान् । सो नहोस् उणादिनिष्पन्न तृन्-तृच्-प्रत्ययान्तशब्दहरूमध्ये दीर्घ गर्न अभीष्टशब्दहरूको मात्र उपधाको दीर्घ होस् अरूको उपधादीर्घ नहोस् भनेर नप्तृ आदि सात शब्दको मात्र ग्रहण गर्‍यौं, गरेपछि सूत्रको अर्थ "अप् शब्द उणादिदेखि अन्यत्र साधिएका तृन् तृच् प्रत्ययान्तशब्द स्वसृशब्द र उणादि भित्रका तृन्तृच्प्रत्ययान्तशब्दमध्ये नप्तृ आदि सात शब्दको मात्र उपधाको दीर्घ होस् संबुद्धि भिन्न सर्वनामस्थान पर भएमा", यस्तो भयो, यो अर्थ भएपछि पितृ, भ्रातृ, जामातृ आदि शब्द उणादि निष्पन्न तृन्तृजन्त हुनाले र उक्त सात शब्दभित्र परिगणित नहुनाले 'पितर्+औ', 'मातर्+औ', 'भ्रातर्+औ' इत्यादि ठाउँमा उपधा दीर्घ भएन 'पितरौ', 'मातरौ', 'भ्रातरौ', यस्तै रूप सिद्ध भए ।

माथिका तीन अनुच्छेद मध्ये पहिला अनुच्छेदमा उणादि शब्दलाई व्युत्पन्न मान्ने पक्षको अभिप्राय, द्वितीय अनुच्छेदमा अव्युत्पन्न मान्ने पक्षको अभिप्राय र तृतीय अनुच्छेदमा प्रत्युदाहरण शैलीबाट "अप्तृन्तृच्०" यो सूत्रमा नप्तृआदि शब्दको ग्रहणबारे विवेचना गरियो । यहाँ वृत्तिकारको विचारमा उणादिशब्दलाई अव्युत्पन्न मानेको नै वृत्तिबाट स्पष्ट छ । पितरौ आदि रूपहरूको साधन प्रक्रिया तल दिइन्छ ।

**पितरौ-** पितृशब्ददेखि प्रथमाको द्विवचन औ आयो,, 'पितृ+औ' भयो "ऋतोङि सर्वनामस्यानयोः" ले अर् गुण भयो 'पितर+औ' भयो, व्युत्पत्ति पक्षमा पितृशब्द उणादिनिष्पन्त तृजन्तशब्द भए पनि नप्तृ आदि शब्दभित्र नपर्ने हुनाले र अव्युत्पत्ति पक्षमा 'उणादि निष्पन्नानाम्०' यो नियम लगाउँदा 'अपृतृन्तृच्०'ले उपधा दीर्घ भएन, 'पितरौ' सिद्ध भयो ।

पितरः । पितरम् । शेषं धातृवत् एवं जामात्रादयः ॥ ना नरौ ॥

**२११. नृ च ६ । ४ । ६ ॥**

अस्य नामि वा दीर्घः । नृणाम् नॄणाम् ॥

**२१२. गोतो णित् ७ । १ । ९० ॥**

ओकाराद्विहितं सर्वनामस्थानं णिद्वत् ।

---

**पितरः**- पितृ शब्ददेखि प्रथमाको वहुवचन जस् आयो, 'पितृ+अस्' भयो, यणलाई वाधेर पूर्वसवर्णदीर्घ पाएकोमा वाधेर "ऋतो ङिसर्वनामस्थानयोः" ले अर् गुण भयो 'पितर्+अस्' भयो, पूर्ववत् पितृ शब्द व्युत्पत्ति पक्षमा नप्त्रादिभित्र नपर्ने र अव्युत्पत्ति पक्षमा तृन्तृच् प्रत्ययान्त नहुनाले "अप्तृन्तृच०" ले उपधा दीर्घ भएन रुत्व विसर्ग भयो 'पितरः' सिद्ध भयो ।

**हे पितः**- पितृ शब्दको सम्वोधन अर्थमा प्रथमाको एकवचन सु आयो पितृ+स् भयो, यहाँ "इको यणचि"लाई बाधेर "प्रथमयोः०"ले पूर्वसवर्णदीर्घ पायो, त्यसलाई वाधेर "ऋतो ङिसर्वनामस्थानयोः"ले अर्गुण भयो, सकारको "रात्सस्य"ले लोप भयो । रेफको विसर्ग भयो, 'हे पितः' सिद्ध भयो । संबोधनको औ जस्मा पनि "ऋतो ङि०"ले गुण हुन्छ, 'हे पितरौ', 'हे पितरः' हुन्छ ।

**पितरम्**- पितृ शब्ददेखि अम् आयो,, पितृ+अम् भयो यहाँ पनि यणलाई वाधेर पूर्व सवर्ण दीर्घ पाएकोमा त्यसलाई बाधेर "अमि पूर्वः" ले पूर्वरूप पायो त्यसलाई वाधेर "ऋतो ङि" ले अर् गुण भयो, पूर्ववत् "अप्तृनतृच्०" ले पितृ शब्द व्युत्पत्ति पक्षमा नप्त्रादि शब्दभित्र नपर्ने र अव्युत्पत्ति पक्षमा तृन्तृच्प्रत्ययान्त नहुनाले उपधादीर्घ भएन, 'पितरम्' सिद्ध भयो । औट्मा, औमा जस्तै प्रक्रिया हुन्छ । पितृ शब्दको शस्देखि सुपसम्म सवै विभक्तिमा धातृशब्दमा जस्तै प्रक्रिया हुन्छ रूप पनि उस्तै हुन्छन् ।

**ना**- (मनुष्य) नृ शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'नृ+स्' भयो "ऋतो ङि०"ले गुण पायो, बाधेर "ऋदुशनस्पुरुदंसो०"ले अनङ् भयो, 'नन्+स्' भयो, "सर्वनामस्थाने चा०"ले दीर्घ भयो, नान्+स् भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप, नकारको "नलोपः प्रातिपदिकान्तस्य"ले लोप भयो । 'ना' सिद्ध भयो ।

**नरौ**- नृ शब्ददेखि औ आयो, 'नृ+औ' भयो, पितृ शब्दको जस्तै वाध्यबाधक प्रक्रियाको अन्तमा "ऋतो ङि०" ले अर्गुण भयो, 'नरौ' सिद्ध भयो । नृ शब्दमा आम् बाहेक सवै विभक्तिका रूप पितृशब्दका जस्तै हुन्छन् साधनप्रक्रिया पनि समान छ । आम्मा वैकल्पिक दीर्घ हुन्छ र दुई रूप हुन्छन् ।

**नृ चेति**- नृ शब्दका स्थानमा नाम् पर भएमा विकल्पले दीर्घ होस् ।

**नृणाम्/नॄणाम्**- नृ शब्ददेखि षष्ठीको वहुवचन आम् आयो, 'नृ+आम्' भयो, यणलाई वाधेर "ह्रस्वनद्यापो नुट्"ले नुट् भयो, 'नृ+नाम्' भयो, "नामि"लाई वाधेर "नृ च" ले नृका ऋकारका स्थानमा वैकल्पिक दीर्घ भयो, 'नॄ+नाम्' दीर्घ नभएको पक्षमा 'नृ+नाम्' यस्तो छ, दुवै पक्षमा ऋवर्ण देखि पररहेको नकार हुनाले "ऋवर्णान्नस्य णत्वं वाच्यम्" यस वार्तिकले नाम्का नकारको णत्व भयो, 'नृणाम्', 'नॄणाम्', यी दुई रूप सिद्ध भए ।

**ओकारान्त शब्द गो (गाई)**

**गोत इति**- ओकारान्त शब्ददेखि विधान गरिएको सर्वनामस्थान संज्ञक प्रत्यय णित् जस्तो होस् ।

---

गौः । गावौ । गावः ॥

**२१३. औतोऽम्शसोः ६ । १ । ९३ ॥**

ओतोऽम्शसोरचि आकार एकादेशः । गाम् । गावौ । गाः । गवा । गवे । गोः । इत्यादि ।

---

**गौः-** गो शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'गो+स्' भयो, 'स्'लाई सर्वनामस्थान संज्ञा भयो । 'स्'यो ओकारान्त गो शब्ददेखि विधान गरिएको सर्वनामस्थानसंज्ञक प्रत्यय हुनाले त्यसलाई "गोतो णित्"ले णिद्वद्भाव भयो, अनि गोका ओकारका स्थानमा "अचोञ्णिति"ले वृद्धि हुँदा औकार भयो, 'गौस्' भयो, सकारको रुत्व, विसर्ग भयो, 'गौः' सिद्ध भयो ।

**गावौ-** गो शब्ददेखि प्रथमाको द्विवचन औ आयो, 'गो+औ' भयो, औलाई "सुडनपुंसकस्य"ले सर्वनामस्थान संज्ञा भयो, "गोतो णित्"ले 'औ' को णिद्वद्भाव भयो, "अचोञ्णिति"ले गोका ओकारका स्थानमा वृद्धि भएर औकार भयो, "एचोऽयवायावः" ले गौका औकारका स्थानमा आव् आदेश भयो, 'गावौ' सिद्ध भयो ।

**गावः-** गो शब्ददेखि प्रथमाको बहुवचन जस् आयो, 'गो+अस्' अस्लाई पूर्ववत् सर्वनामस्थान संज्ञा, णिद्वद्भाव भएपछि गोका ओकारका स्थानमा वृद्धि, आव् आदेश भयो, गावस् भयो, रुत्व विसर्ग भयो, 'गावः' सिद्ध भयो ।

**ओत इति-** ओकारदेखि अम् र शस् सम्बन्धी अच् पर भएमा पूर्व र परका स्थानमा आकार एकादेश होस् ।

**गाम्-** गो शब्ददेखि अम् आयो, 'गो+अम्' भयो, "गोतो णित्"ले अम्को णिद्वद्भाव भएपछि "अचो ञ्णिति"ले वृद्धि पायो, त्यसलाई बाधेर "औतोऽम्शसोः"ले गोको ओकार र अम्को अकारका स्थानमा आकार एकादेश भयो, 'गाम्' सिद्ध भयो ।

**गावौ-** गो शब्ददेखि द्वितीयाको द्विवचन औट् आयो, 'गो+औ' भयो, प्रथमाको द्विवचनमा जस्तै प्रक्रिया भयो, 'गावौ' सिद्ध भयो ।

**गाः-** गो शब्ददेखि द्वितीयाको बहुवचन शस् आयो, 'गो+अस्' भयो । शस् सर्वनामस्थान नहुनाले णिद्वद्भाव भएन । "औतोऽम्शसोः"ले शस् पर छ अस् र पूर्व र पर गोको ओकार र अस्को अकारका स्थानमा आकार एकादेश भयो, 'ग्+आस्'-'गास्' रुत्व विसर्ग भयो, "गाः" सिद्ध भयो, (पूर्वसवर्ण दीर्घ नभएकोले सकारको नत्व भएन)

**गवा-** गो शब्ददेखि तृतीयाको एकवचन टा आयो, 'गो+आ' भयो, अव् आदेश भयो, गवा सिद्ध भयो । भ्याम् भिस्मा विशेष कार्य छैन । 'गोभ्याम्', 'गोभिः' यी रूप हुन्छन् ।

**गवे-** गो शब्ददेखि चतुर्थीको एकवचन ङे आयो, 'गो+ए' भयो, अव् आदेश भयो, "गवे" सिद्ध भयो । भ्याम् भ्यस्मा विशेष कार्य छैन 'गोभ्याम्', 'गोभ्यः' यी रूप हुन्छन् ।

**गोः-**गो शब्ददेखि पञ्चमीको एकवचन ङसि आयो, गो+अस् भयो, "एचोऽयवायावः" लाई बाधेर "ङसिङसोश्च"ले पूर्वरूप भयो, गोस्, रुत्वविसर्ग भयो, "गोः" सिद्ध भयो । भ्याम् भ्यस्मा पूर्ववत् । ङस्मा ङसिमा जस्तै प्रक्रिया हुन्छ । ओस्मा, 'गो+ओस्' अव् आदेश रुत्व विसर्ग 'गवोः' सिद्ध भयो । आम्मा 'गो+आम्' यहाँ अवादेश भएर 'गवाम्' सिद्ध भयो ।

**गवि-** गो शब्ददेखि सप्तमीको एकवचन ङि आयो, अव् आदेश भयो, 'गवि' । ओस्मा 'पूर्ववत् गवोः', सुप्मा 'गो+सु' यहाँ "आदेशप्रत्यययोः" ले षत्व भयो, 'गोषु' सिद्ध भयो ।

२१४. **रायो हलि** ७ । २ । ८५ ॥

अस्याकारादेशो हलि विभक्तौ । राः । रायौ । रायः । राभ्यामित्यादि । ग्लौः । ग्लावौ । ग्लावः । ग्लौभ्यामित्यादि ॥

**इत्यजन्तपुंलिङ्गाः ।**

---

**ऐकारान्त शब्द-रै** (धन)

**रायो हलीति**-रै शब्दका स्थानमा आकार आदेश होस् हलादि विभक्ति पर भएमा ।

**राः**- रै शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'रै+स्' भएपछि हलादि विभक्ति सु पर छ र "रायो हलि"ले "अलोऽन्त्यस्य" लाएर रैका ऐकारका स्थानमा आकार भयो, 'रास्' भयो, रुत्व, विसर्ग भयो, 'राः' सिद्ध भयो ।

**रायौ**-रै शब्ददेखि औ आयो, रै+औ यहाँ "एचोऽयवायावः" ले आय् आदेश भयो, 'रायौ' सिद्ध भयो ।

**रायः**- रै शब्ददेखि जस् आयो, 'रै+अस्' भयो, आय् आदेश भयो, 'रायस्' भयो, रुत्व, विसर्ग भयो, 'रायः' सिद्ध भयो । यस्तै प्रकारले सम्पूर्ण अजादि विभक्ति पर भएमा आय् आदेश हुन्छ विशेष कार्य केही छैन ।

**राभ्याम्**-रै शब्ददेखि तृतीयाको द्विवचन भ्याम् आयो, 'रै+भ्याम्' भयो, रैका ऐकारका स्थानमा "रायो हलि"ले आकार भयो, 'राभ्याम्' सिद्ध भयो । यस्तै प्रकारले हलादि विभक्ति पर भएमा "रायो हलि" ले आकार आदेश हुन्छ । अरू विशेष कार्य छैन ।

**रै शब्दका रूप-**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| प्र. | राः | रायौ | रायः | द्वि. | रायम् | रायौ | रायः |
| तृ. | राया | राभ्याम् | राभिः | च. | राये | राभ्याम् | राभ्यः |
| प. | रायः | राभ्याम् | राभ्यः | ष. | रायः | रायोः | रायाम् |
| स. | रायि | रायोः | रासु | सं. | हे राः ! | हे रायौ ! | हे रायः ! |

**औकारान्त ग्लौ शब्द-**

**ग्लौः** (चन्द्रमा) ग्लौ शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'ग्लौ+स्' भयो, रुत्व विसर्ग भयो, 'ग्लौः' सिद्ध भयो ।

**ग्लावौ**- ग्लौ शब्ददेखि द्वितीयाको द्विवचन 'औ' आयो, 'ग्लौ+औ' भयो, "एचोऽयवायावः"ले आव्आदेश भयो, 'ग्लावौ' ।

**ग्लावः**- ग्लौ शब्ददेखि जस् आयो, 'ग्लौ+अस्' भयो, आव् आदेश भयो, रुत्व विसर्ग भयो, 'ग्लावः' सिद्ध भयो, । यसैगरी सम्पूर्ण अजादि विभक्ति पर भएमा आव् आदेश र अपेक्षित स्थलमा रुत्व, विसर्गबाहेक अरू केही विशेष कार्य छैन ।

**ग्लौभ्याम्**- ग्लौ शब्ददेखि तृतीयैकवचन भ्याम् आयो, 'ग्लौभ्याम्' सिद्ध भयो । यस्तै प्रकारले हलादि विभक्तिमा पनि भिस्,भ्यस्मा सकारको रुत्व विसर्ग हुन्छ, अरू केही विशेष कार्य छैन । सुप्मा "आदेशप्रत्यययोः"ले षत्व भएर 'ग्लौषु' यो रूप बन्दछ ।

**अजन्त पुलिङ्गप्रकरण समाप्त भयो ।**

---

## अथाजन्तस्त्रीलिङ्गाः

रमा ।

**२१५. औङ आपः ७ । १ । १८ ॥**

आवन्तादङ्गात्परस्यौङः शी स्यात् । औङित्यौकारविभक्तेः संज्ञा । रमे । रमाः ॥

**२१६. सम्बुद्धौ च ७ । ३ । १०६ ॥**

आप एकारः स्यात्सम्वुद्धौ । एङ्ह्रस्वादिति संबुद्धिलोपः । हे रमे । हे रमे । हे रमाः ।

---

### अब अजन्तस्त्रीलिङ्गप्रकरण आरम्भ गरिन्छ

**आकारान्त शब्द- रमा (लक्ष्मी)**

**रमा-**रम् धातुदेखि अच् प्रत्यय भयो,रम भयो, 'रम' यो कृदन्त हुनाले यसलाई "कृत्तद्धितसमासाश्च"ले प्रातिपदिकसंज्ञा भयो, "अजाद्यतष्टाप्"ले टाप् प्रत्यय भयो, रमा भयो । "प्रातिपदिकग्रहणे लिङ्गविशिष्टस्यापि ग्रहणम्" यो परिभाषा लगाएर रमा पनि प्रातिपदिक हुनाले "ङ्याप्प्रतिपदिकात्"ले स्वादि सबै पाएकोमा प्रातिपदिकार्थ मात्रमा एकत्वसंख्या विशिष्टरूप अर्थ बुझिँदा प्रथमाको एकवचन सु आयो, 'रमा स्' भयो, "हल्ङ्याब्भ्यो दीर्घात्०"ले सकारको लोप भयो, 'रमा' सिद्ध भयो ।

"ङ्याप् प्रातिपदिकात्"ले यस सूत्रमा ङ्याप् (ङ्यन्त आबन्त) ग्रहण गर्नाको फल अर्कै छ भन्ने कुरा माथि बताइएको छ, अतः यहाँ 'रमा' यसलाई प्रातिपदिक मानेर नै स्वादि ल्याउनु ठीक छ ।

**औङ इति-** आप् प्रत्यय अन्तमा हुने शब्ददेखि पर रहेका औङ्का स्थानमा शी आदेश होस् । औङ् यो औकार विभक्ति (अर्थात् औ र औट्) को संज्ञा हो ।

**रमे-**रमा शब्ददेखि प्रथमाको द्विवचन औ आयो, 'रमा+औ' भयो, "प्रथमयोः०"ले पूर्वसवर्णदीर्घ पाएको "दीर्घाज्जसि च"ले निषेध भयो । "औङ आपः"ले आबन्त अङ्ग रमादेखि पर रहेको हुनाले औका स्थानमा शी आदेश भयो, "स्थानिवदादेशो०" लगाएर शीमा प्रत्ययत्व धर्म आएपछि शकारको "लशक्वतद्धिते"ले इत्संज्ञा "तस्य लोपः"ले लोप भयो, 'रमा+ई' भयो, "आद् गुणः"ले गुण भयो, 'रमे' सिद्ध भयो ।

**रमाः-** रमा शब्ददेखि प्रथमाको बहुवचन जस् आयो, 'रमा+अस्' भयो, यहाँ "अकः सवर्णे दीर्घः"ले दीर्घ पायो, त्यसलाई बाधेर "प्रथमयोः पूर्वसवर्णः"ले पूर्वसवर्णदीर्घ पाएकोमा "दीर्घाज्जसि च"ले निषेध भयो । "बाधकाभावे पुनरुत्सर्गशास्त्रस्य प्रवृत्तिः" यो परिभाषा लगाएर "अकः सवर्णे०" ले दीर्घ भयो 'रमास्' भयो, रुत्व, विसर्ग भयो 'रमाः' सिद्ध भयो ।

**सम्बुद्धौ चेति-** आप् अन्तमा हुने अङ्गका स्थानमा एकार आदेश होस् सम्बुद्धि पर भएमा ।

**एङिति-**"एङ्ह्रस्वात्सम्बुद्धेः"ले सम्बुद्धिको लोप हुन्छ ।

**हे रमे-** रमा शब्ददेखि सम्बोधन अर्थ बुझिंदामा प्रथमाको एकवचन सु आयो 'रमा+स' भयो । आबन्त अङ्ग रमा यसका स्थानमा सम्बुद्धि 'स्'पर भएकाले "सम्बुद्धौ च" ले "अलोऽन्त्यस्य" लगाएर रमाका आकारका स्थानमा एकार भयो 'रमे+स्' भयो । "एङ्ह्रस्वात्संबुद्धेः" ले सकारको लोप भयो, 'रमे' भयो । हे शब्दको पूर्वप्रयोग भयो 'हे रमे' सिद्ध भयो ।

**हे रमे, हे रमाः-** रमा शब्दको सम्बोधनमा प्रथमाको द्विवचन बहुवचनमा पनि पूर्ववत् प्रथमाको द्विवचन र बहुवचनमा जस्तै प्रकिया भएर 'रमे, रमाः' भएपछि दुवै रूपमा हे शब्दको

रमाम् । रमे । रमाः ॥

**२१७. आङि चापः ७ । ३ । १०५ ॥**

आङि ओसि चाप एकारः । रमया । रमाभ्याम् । रमाभिः ॥

**२१८. याडापः ७ । ३ । ११३ ॥**

आपो ङितो याट् । वृद्धिः । रमायै । रमाभ्याम् २ । रमाभ्यः २ । रमायाः २ । रमयोः २ ।

---

पूर्वप्रयोग भयो 'हे रमे, हे रमाः' सिद्ध भयो ।

**रमाम्** - रमा शब्ददेखि द्वितीयाको एकवचन अम् आयो 'रमा+अम्' भयो, "अकः सवर्णे०"ले दीर्घ पायो, त्यसलाई बाधेर "प्रथमयोः०"ले पूर्वसवर्ण दीर्घ पायो । त्यसलाई बाधेर "अमि पूर्वः" ले पूर्वरूप भयो, 'रमाम्' सिद्ध भयो ।

**रमे**- रमा शब्ददेखि द्वितीयाको द्विवचन औट् आयो "रमा+औ" भयो औका स्थानमा "औङ आपः" ले शी आदेश, "आद्गुणः"ले गुण भयो, 'रमे' सिद्ध भयो ।

**रमा**- रमा शब्ददेखि द्वितीयाको वहुवचन शस् आयो 'रमा+अस्' भयो "अकः सवर्णे दीर्घः" ले दीर्घ पायो त्यसलाई बाँधेर "प्रथमयोः पूर्वसवर्णः" पूर्वसवर्ण दीर्घ भयो, 'रमास्' स्त्रीलिङ्ग हुनाले "तस्माच्छसो नः पुंसि" लागेन सकारको रुत्व र विसर्ग भयो 'रमाः' ।

**आङि चेति**- आङ् र ओस् पर भएमा आवन्त अङ्गका स्थानमा एकार होस् । आङ् यो टाको संज्ञा हो भन्ने कुरा "आङो नाऽस्त्रियाम्" यस सूत्रमा भनिसकिएको छ ।

**रमया**- रमा शब्ददेखि तृतीयाको एकवचन टा आयो 'रमा+आ' भयो "अकः सवर्णे०"ले दीर्घ पायो त्यसलाई बाँधेर "आङि चापः" ले आङ् (टा) पर भएको हुनाले आवन्त अङ्ग रमा सबैका स्थानमा एकार पाएकोमा "अलोऽन्त्यस्य" लगाएर रमाका आकारका स्थानमा एकार भयो 'रमे+आ' भयो "एचोऽयवायावः"ले अय् आदेश भयो 'रमया' सिद्ध भयो ।

**रमाभ्याम्**- रमा शब्ददेखि तृतीयाद्विवचन भ्याम् आयो 'रमाभ्याम्' सिद्ध भयो ।

**रमाभिः**- रमा शब्ददेखि तृतीयाको बहुवचन भिस् आयो रुत्व, विसर्ग भयो 'रमाभिः' ।

**याडिति**- आवन्त अङ्गदेखि पर रहेको ङित् विभक्तिको याट् आगम होस् ।

**रमायै**- रमा शब्ददेखि चतुर्थीको एकवचन ङे आयो 'रमा+ए' भयो, भएपछि "याडापः"ले आवन्त अङ्ग रमादेखि ङित् विभक्ति 'ए' पर भएको हुनाले याट् आगम भयो, टकारको इत्संज्ञा लोप भयो टित्त्वाद् "आद्यन्तौ टकितौ"लगाएर एको आदिपट्टि 'या' भयो, 'रमाया+ए' भयो, 'रमाया+ए' यहाँ "वृद्धिरेचि"ले वृद्धि भयो, 'रमायै' सिद्ध भयो ।

**रमाभ्याम्, रमाभ्यः** चतुर्थीको द्विवचनमा 'रमाभ्याम्' बहुवचनमा 'रमाभ्यः' यहाँ केही विशेप कार्य छैन ।

**रमायाः२**- पञ्चमी र षष्ठीको एकवचनमा 'रमा+अस्' यहाँ "याडापः"ले याट् आगम भएपछि 'रमाया+अस्' यहाँ "अकः सवर्णे दीर्घः"ले दीर्घ भयो, रुत्व, विसर्ग भयो, 'रमायाः' सिद्ध भयो । चतुर्थी र पञ्चमीको द्विवचन र बहुवचनमा 'रमाभ्याम्', 'रमाभ्यः' । समान रूप हुन्छन् ।

**रमयोः२**- षष्ठी र सप्तमीको द्विवचनमा 'रमा+ओस्' यस्तो स्थितिमा "वृद्धिरेचि"ले पाएको वृद्धिलाई बाधेर "आङि चापः"ले रमाका आकारका स्थानमा एकार भयो, 'रमे+ओस्' भयो, "एचोऽयवायावः"ले अय् आदेश भयो, 'रमयोस्' भयो, रुत्व, विसर्ग भयों, 'रमयोः' सिद्ध भयो ।

---

रमाणाम् । रमायाम् । रमासु ॥ एवं दुर्गाम्बिकादयः ॥

२१९. **सर्वनाम्नः स्याड्ढ्रस्वश्च** ७ । ३ । ११४ ॥

आवन्तात्सर्वनाम्नो ङितः स्याट् स्यादापश्च ह्रस्वः ।

---

**रमाणाम्**-रमा शब्ददेखि षष्ठीको बहुवचन आम् आयो, 'रमा+आम्' भयो, 'रमा+आम्' यहाँ "अकः सवर्णे दीर्घः"ले दीर्घ पायो, त्यसलाई बाधेर आवन्त अङ्ग रमादेखि पर रहेको आम् हुनाले "ह्रस्वनद्यापो नुट्"ले आम्को नुट् आगम भयो, 'रमा+नाम्' भयो "अट्कुप्वाङ्नुम्व्यवायेऽपि"ले नाम्का नकारको णत्व भयो, 'रमाणाम्' सिद्ध भयो ।

**रमायाम्**-रमा शब्ददेखि सप्तमीको एकवचन ङि आयो, 'रमा+इ' भयो यहाँ "आद्गुणः" लाई बाधेर आबन्तदेखि पर रहेको हुनाले ङिका स्थानमा "ङेराम्नद्याम्नीभ्यः"ले आम् आदेश भयो, स्थानिवद्भाव भएर ङिमा रहेको ङित्व आम्मा पनि आयो,र "ह्रस्वनद्यापो नुट्"लाई बाधेर "याडापः"ले याट् आगम भयो, 'रमाया+आम्' भयो, "अकः सवर्णे०"ले दीर्घ भयो, 'रमायाम्' सिद्ध भयो ।

**रमासु**-रमा शब्ददेखि सप्तमीको बहुवचन सुप् आयो,रमासु सिद्ध भयो ।

**रमा शब्दका रूपहरू**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| प्र. | रमा | रमे | रमाः | द्वि. | रमाम् | रमे | रमाः |
| तृ. | रमया | रमाभ्याम् | रमाभिः | च. | रमायै | रमाभ्याम् | रमाभ्यः |
| पं. | रमायाः | रमाभ्याम् | रमाभ्यः | ष. | रमायाः | रमयोः | रमाणाम् |
| स. | रमायाम् | रमयोः | रमासु | सं. | हे रमे ! | हे रमे ! | हे रमाः ! |

**एवमिति**–यस्तै प्रकारले दुर्गा,अम्बिका,महिला,अङ्गना,उमा,गङ्गा,यमुना आदि शब्द पनि जान्नू । सर्वनामसंज्ञक शब्दमा केही फरक पर्ने हुनाले पहिले सर्वनामसंज्ञक शब्द सर्वा, उत्तरपूर्वा, शब्दको रूपसिद्धि प्रक्रिया दिइन्छ।

**स्त्रीलिङ्गमा सर्वनामसंज्ञाका दुई फल छन्**- १. ङित् विभक्तिमा स्याट् आगम र आप्को ह्रस्व । २. आम्मा सुट् आगम ।

यहाँ "जशःशी"ले शी आदेश "सर्वनाम्नः स्मै"ले स्मै आदेश र "ङसिङ्योः स्मात्स्मिनौ"ले स्मात् स्मिन् आदेश पाउँदैनन् । किनकि यी सूत्रले ह्रस्व अकारान्त सर्वनामसंज्ञक शब्द लिन्छन् । स्त्रीलिङ्गमा टाप् भएपछि दीर्घ आकारान्त सर्वा आदि शब्द नै हुन्छन् ।

**सर्वनाम्न इति**- आबन्त सर्वनामसंज्ञक शब्ददेखि पर रहेका ङित् विभक्तिको स्याट् आगम होस् आप्को ह्रस्व पनि होस् ।

सर्वशब्दको स्त्रीत्व बुझिँदामा "अजाद्यतष्टाप्"ले टाप् प्रत्यय हुन्छ र सर्वाशब्द हुन्छ । "सर्वादीनि सर्वनामानि" यस सूत्रले सर्व शब्दलाई सर्वनाम संज्ञा हुँदा "प्रातिपदिकग्रहणे लिङ्गविशिष्टस्यापि ग्रहणम्" यो परिभाषा लगाएर सर्वा शब्दलाई पनि सर्वनाम संज्ञा हुन्छ । स्याट् आगम गर्ने सूत्रमा आवन्त सर्वनाम-संज्ञक शब्द भनेकोले स्याट् गर्दा यो परिभाषाको आवश्यकता नपरे पनि सुट् आगम गर्दा यो परिभाषा चाहिन्छ । सर्वाशब्दको प्रथमा विभक्ति, द्वितीया विभक्ति, तृतीया विभक्तिमा रमा शब्दमा जस्तै प्रक्रिया हुन्छ ।

सर्वस्यै । सर्वस्याः । सर्वासाम् । सर्वस्याम् । शेषं रमावत् ॥ एवं विश्वादय आवन्ताः ॥

**२२०. विभाषा दिक्समासे बहुव्रीहौ १ । १ । २८ ॥**

सर्वनामता वा । उत्तरपूर्वस्यै, उत्तरपूर्वायै ।

---

**सर्वस्यै-** सर्वा शब्ददेखि चतुर्थीको एकवचन ङे आयो, 'सर्वा+ए' भयो "वृद्धिरेचि"ले वृद्धि पायो त्यसलाई बाधेर "याडापः" ले याट् आगम पायो त्यसलाई बाधेर आबन्त सर्वनामसंज्ञकशब्द सर्वादेखि पर रहेको हुनाले "सर्वनाम्नः स्याड्ढ्रस्वश्च"ले ङेको स्याट् आगम भयो, टकारको इत्संज्ञा लोप भयो, टित्वात् 'ए'को आदिपट्टि 'स्या' भयो, सर्वाको आकारको ह्रस्व भएर अकार भयो । 'सर्वस्या+ए' भयो, "वृद्धिरेचि"ले वृद्धि भयो, 'सर्वस्यै' सिद्ध भयो । भ्याम्, भिस्मा-सर्वाभ्याम्, सर्वाभिः, यी रूप हुन्छन् ।

**सर्वस्याः** सर्वा शब्ददेखि पञ्चमीको एकवचन ङसि आयो, 'सर्वा+अस्' भयो, 'सवा+अस्' यहाँ "अकः सवर्णे०"ले दीर्घ पायो, त्यसलाई बाधेर "याडापः" ले आट् आगम पायो त्यसलाई बाधेर सर्वनाम्नः स्याड्ढ्रस्वश्च"ले स्याट् आगम भयो । सर्वाको आकारका स्थानमा अकार भयो, 'सर्वस्या+अस्' भयो, दीर्घ भयो, 'सर्वस्यास्' भयो, रुत्व, विसर्ग भयो 'सर्वस्याः' सिद्ध भयो । षष्ठीको एकवचनमा पनि यही प्रक्रिया भएर 'सर्वस्याः' रूप बन्दछ ।

**सर्वासाम्-** सर्वा शब्ददेखि आम् आयो, सर्वा आम् भयो, भएपछि सर्वशब्दलाई सर्वनामसंज्ञा छ तर सर्वा शब्दलाई सर्वनामसंज्ञा नहुनाले "प्रातिपदिकग्रहणे लिङ्गविशिष्टस्यापि ग्रहणम्" प्रातिपदिकको ग्रहणमा लिङ्गबोधक प्रत्ययविशिष्टको पनि ग्रहण हुन्छ । यो परिभाषा लगाएर सर्वशब्दको ग्रहणमा लिङ्गबोधक टाप् प्रत्यय विशिष्ट सर्वाशब्दको पनि ग्रहण भयो र सर्वा शब्दलाई पनि "सर्वादीनि सर्वनामानि"ले सर्वनामसंज्ञा भयो, "आमि सर्वनाम्नः सुट्" ले सुट् आगम भयो 'सर्वासाम्' ।

**सर्वस्याम्-** सर्वा शब्ददेखि ङि आयो, 'सर्वा+इ' भयो "आद्गुणः ले" गुण पायो, त्यसलाई बाधेर "ङेराम्नद्याम्नीभ्यः"ले ङिका स्थानमा आम् भयो । "याडापः" याट् पायो, त्यसलाई बाधेर "सर्वनाम्नः स्याट्०"ले स्याट् आगम सर्वाका आकारका स्थानमा ह्रस्व अकार भयो, 'सर्वस्या+आम्' भयो "अकः सवर्णे०"ले दीर्घ भयो, 'सर्वस्याम्' सिद्ध भयो ।

शेर्षामति- बाँकी स्थलमा रमा शब्द जस्तै हुन्छ । यसैगरी विश्वा आदि आबन्त सर्वादि शब्द पनि जान्नू ।

**विभाषेति-** दिग्वाचक शब्दको बहुव्रीहिसमासमा सर्वनामसंज्ञा विकल्पले होस् । बहुव्रीहिसमासमा "दिङ्नामान्यन्तराले" भन्ने सूत्रले गरिएको समासलाई दिक्समास भनिन्छ । उत्तरस्याः पूर्वस्याश्च दिशोर्यदन्तरालं सा दिक् उत्तरपूर्वा (उत्तरको र पूर्वको मध्यभाग जो छ त्यो दिशा उत्तरपूर्वा कहिन्छ ।) उत्तरपूर्वा भनेको ईशान्यकोण (विदिशा) हो ।

**उत्तरपूर्वस्यै/उत्तरपूर्वायै-** उत्तरपूर्वा शब्दलाई "प्रातिपदिकग्रहणे०" यो परिभाषा लगाएर सर्वाद्यन्त शब्द स्वरूप हुनाले "सर्वादीनि सर्वनामानि"ले नित्य सर्वनाम संज्ञा पाएकोमा "न बहुव्रीहौ"ले निषेध भयो । "विभाषा दिक्समासे बहुव्रीहौ"ले विकल्पले सर्वनाम संज्ञा भयो, उत्तरपूर्वा शब्ददेखि चतुर्थी एकवचन ङे आयो, 'उत्तरपूर्वा+ए' भयो, "याडापः" लाई बाधेर "सर्वनाम्नः स्याट्०" ले स्याट् आगम र ह्रस्व विकल्पले भयो, 'उत्तरपूर्वस्या+ए' भयो, "वृद्धिरेचि"ले वृद्धि भयो, उत्तरपूर्वस्यै, सर्वनामसंज्ञा नभएको पक्षमा स्याट् भएन "याडापः"ले याट् भयो । 'उत्तरपूर्वाया+ए' भयो, वृद्धि भयो 'उत्तरपूर्वायै' यसरी दुई रूप सिद्ध भए ।

यस्तै प्रकारले ङसि र ङस् मा उत्तरपूर्वस्याः/उत्तरपूर्वायाः आम्मा

तीयस्येति वा सर्वनामसंज्ञा । द्वितीयस्यै, द्वितीयायै ॥ एवं तृतीया ॥ अम्बार्थेति ह्रस्वः । हे अम्ब । हे अक्क । अल्ल ॥ जरा । जरसौ इत्यादि । पक्षे रमावत् ॥ गोपा विश्वपावत् ॥

---

उत्तरपूर्वासाम्/उत्तरपूर्वाणाम्, ङिमा उत्तरपूर्वस्याम्/उत्तरपूर्वायाम् यी रूप हुन्छन्, अरू रूप रमा शब्दका जस्तै हुन्छन् ।

**तीयस्येति**– "तीयस्य ङित्सु वा" यस वार्तिकले तीयप्रत्ययान्त शब्दको ङित् विभक्तिका विषयमा विकल्पले सर्वनाम संज्ञा हुन्छ ।

**द्वितीयस्यै/द्वितीयायै**– द्वितीया शब्दलाई ङित् विभक्ति ल्याउनु छ भन्दामा "प्रातिपदिक ग्रहणे लिङ्गविशिष्टस्यापि ग्रहणम्" यो परिभाषा लाएर "तीयस्य ङित्सु वा" यस वार्तिकले विकल्पले सर्वनाम संज्ञा भएपछि द्वितीया शब्ददेखि चर्तुथीको एकवचन ङे आयो, 'द्वितीया+ ए' भयो, "सर्वनाम्नः स्याट्०"ले स्याट् आगम र ह्रस्व भयो, वृद्धि भयो, 'द्वितीयस्यै' सिद्ध भयो । सर्वनामसंज्ञा न भएको पक्षमा 'द्वितीया+ए' यहाँ "याडापः"ले याट् आगम भयो, वृद्धि भयो । 'द्वितीयायै' सिद्ध भयो । यस्तै प्रकारले ङसि, ङस्, र, ङि मा पनि जान्नु । ङित् विभक्तिका विषयमा भनेकोले आम्मा सर्वनाम संज्ञा भएन, सुट् पनि भएन 'द्वितीयानाम्' यस्तो एक रूप भयो ।

**एवमिति**– यस्तै प्रकारले तृतीया शब्द पनि जान्नु ।

**अम्बार्थेति**– अम्बा, अक्का,र अल्ला शब्द, अम्बार्थक हुनाले "अम्बार्थनद्योर्ह्रस्वः"ले संबुद्धिमा ह्रस्व भएर हे अम्ब, हे अक्क, हे अल्ल, यी रूप हुन्छन् । अन्यत्र रमा शब्दका जस्तै रूप हुन्छन् ।

**जरा**– जरा शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'जरा स्' भयो, जरा यो आवन्त हुनाले "हल्ङ्याब्भ्यो०"ले सुको लोप भयो 'जरा' सिद्ध भयो ।

**जरसौ**– जरा शब्ददेखि औ आयो, 'जरा+औ' भयो, भएपछि "जराया जरसन्यतरस्याम्"ले अजादि विभक्ति पर छ र जरस् आदेश गर्दा "अलोऽन्त्यस्य"ले अन्त्य अल्का स्थानमा पाएकोमा बाधेर "अनेकाल् शित०"ले अनेकाल् हुनाले 'जरा' सबैका स्थानमा जरस् आदेश भयो, 'जरसौ' सिद्ध भयो । जरस् आदेश नभएको पक्षमा औका स्थानमा "औङ आपः"ले शीआदेश भयो, गुण भयो, 'जरे' सिद्ध भयो । यस्तै प्रकारले अजादिविभक्ति पर भएमा एकपक्षे जरस् आदेश हुन्छ ।

**पक्ष इति**– जरस् आदेश नभएको पक्षमा र हलादि विभक्ति पर भएमा जरा शब्द 'रमा' जस्तै हुन्छ ।

**जराशब्दका रूप**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र. | जरा | जरसौ/जरे | जरसः/जराः |
| द्वि. | जरसम्/जराम् | जरसौ/जरे | जरसः/जराः |
| तृ. | जरसा/जरया | जराभ्याम् | जराभिः |
| च. | जरसे/जरायै, | जराभ्याम् | जराभ्यः |
| पं. | जरसः/जरायाः | जराभ्याम् | जराभ्यः |
| ष. | जरसः/जरायाः | जरसोः/जरयोः | जरसाम्/जराणाम् |
| स. | जरसि/जरायाम् | जरसोः/जरयोः | जरासु |
| सं. | हे जरे ! | हे जरसौ/हे जरे ! | हे जरसः/हे जराः ! |

**गोपेति**– गोपा शब्द विश्वपा शब्द जस्तै हो । गाः पाति (गाई पाल्छ) यस विग्रहमा 'गो+ङस्' पूर्वमा हुने 'पा'धातुदेखि क्विप्प्रत्यय भएर गोपा शब्द बन्दछ । **गोपाः** यो टाप् ङीप्

मतीः । मत्या ॥

२२१. **ङिति ह्रस्वश्च १ । ४ । ६ ॥**

इयङुवङ्स्थानौ स्त्रीशब्दभिन्नौ नित्यस्त्रीलिङ्गावीदूतौ, ह्रस्वौ चेवर्णोवर्णौ, स्त्रियां वा नदीसञ्ज्ञौ स्तो ङिति । मत्यै, मतये । मत्याः २ । मतेः २ ॥

२२२. **इदुद्भ्याम् ७ । ३ । ११७ ॥**

इदुद्भ्यां नदीसंज्ञकाभ्यां परस्य ङेराम् । मत्याम्, मतौ ।

---

प्रत्ययान्तशब्द नहुनाले पुँलिङ्गमा जस्तै यहाँ पनि हुन्छ । विशेष कार्य केही हुँदैनन् ।

**इकारान्त शब्द-**

मति शब्दमा सु-देखि औट्-सम्म हरि शब्दका जस्तै रूप हुन्छन्, इकारान्त शब्द र रूपसिद्धि प्रक्रिया पनि समान छ । शसमा नकार आदेश र टामा ना आदेश हुँदैन । ङे., ङसि, ङस् र ङिमा एक पक्षमा हरि शब्दका जस्तै रूप हुन्छन् । एक पक्षमा फरक छ । हलादि विभक्तिमा सर्वत्र हरि शब्दका जस्तै रूप हुन्छन्, फरक पर्ने ठाउँका रूपहरू मूलमा दिएको छ ।

**मतीः-** मति शब्ददेखि द्वितीयाको बहुवचन शस् आयो, 'मति+अस्' भयो "इको यणचि" ले यण् पायो, त्यसलाई बाँधेर "प्रथमयोः पूर्वसवर्णः"ले पूर्वसवर्ण दीर्घ भयो, मतीस् भयो । "तस्माच्छसो नः पुंसि" यहाँ लागेन किन कि त्यसले पुँलिङ्गमा भन्छ, यहाँ स्त्रीलिङ्ग छ । मतीस्का सकारको रुत्व विसर्ग भयो 'मतीः' सिद्ध भयो ।

**मत्या-** मति शब्ददेखि तृतीयाको एकवचत टा आयो, 'मति+आ' भयो, यहाँ "आङो नाऽस्त्रियाम्"ले टाका स्थानमा ना आदेश भएन । किन भने त्यसले स्त्रीलिङ्गमा नहोस् भन्छ । अतः 'मति+आ' यहाँ "इको यणचि"ले यण् भयो, 'मत्या' सिद्ध भयो ।

**ङितीति-** इयङ् र उवङ्का स्थानी भएका स्त्रीशब्ददेखि भिन्न नित्यस्त्रीलिङ्गमा वर्तमान दीर्घ ईकारान्त दीर्घ ऊकारान्त शब्द र ह्रस्व इवर्ण ह्रस्व उवर्ण अन्तमा हुने शब्द पनि स्त्रीलिङ्गमा विकल्पले नदीसंज्ञक होऊन् ङित् विभक्ति पर भएमा ।

**मत्यै/मतये-** मति शब्ददेखि चतुर्थीको एकवचन ङे आयो, 'मति+ए' भयो, यहाँ ह्रस्व इकारान्त मति शब्ददेखि पर ङित् विभक्ति हुनाले मतिलाई "ङिति ह्रस्वश्च"ले नदीसंज्ञा भयो, ङित् प्रत्यय 'ए'को "आण्नद्याः"ले आट् आगम भयो । 'मति+आ+ए' भयो, "आटश्च"ले वृद्धि भयो, 'मति+ऐ' "इको यणचि"ले यण् भयो, 'मत्यै' सिद्ध भयो । "ङिति ह्रस्वश्च"ले नदीसंज्ञा नभएको पक्षमा "शेषो घ्यसखि"ले मतिलाई घिसंज्ञा भयो, "घेर्ङिति"ले गुण भयो, अय् आदेश भयो, 'मतये' यी दुई रूप सिद्ध भए ।

**मत्याः२/मतेः२-** पञ्चमी एकवचनमा 'मति+अस्' यस्तो स्थितिमा मतिशब्दलाई "ङिति ह्रस्वश्च"ले नदीसंज्ञा, आट्आगम, वृद्धि, यण्, रुत्व, विसर्ग भएर 'मत्याः' सिद्ध भयो । नदीसंज्ञा नभएको पक्षमा घि-संज्ञा, गुण, "ङसिङसोश्च"ले पूर्वरूप, रुत्व, विसर्ग भएर 'मतेः' सिद्ध भयो । यसरी दुई रूप भए । षष्ठीको एकवचनमा पनि यही प्रक्रिया भयो, 'मत्याः' 'मतेः' यी दुई रूप भए ।

**इदुदिति-** नदीसंज्ञक ह्रस्व इकारान्त, ह्रस्व उकारान्त शब्ददेखि पर रहेका ङिका स्थानमा आम् आदेश होस् ।

**मत्याम्/मतौ-** मति शब्ददेखि सप्तमीको एकवचन ङि आयो, 'मति+इ' भयो, "ङिति ह्रस्वश्च" ले मतिको नदीसंज्ञा भयो, ङिका स्थानमा "ङेराम्नद्याम्नीभ्यः"ले आम् पायो, त्यसलाई बाधेर "औत्"ले औकार आदेश पायो, त्यसलाई बाधेर "इदुद्भ्याम्"ले नदीसंज्ञक ह्रस्व इकारान्त

शेषं हरिवत् ॥ एवं बुद्ध्यादयः ॥

**२२३. त्रिचतुरोः स्त्रियां तिसृचतसृ ७ । २ । ९९ ॥**

**स्त्रीलिङ्गयोरेतौ स्तो विभक्तौ ॥**

**२२४. अचि र ऋतः ७ ।२ । १०० ॥**

तिसृचतसृ एतयोर्ऋकारस्य रेफादेशः स्यादचि । गुणदीर्घोत्वानामपवादः । तिस्रः ।

---

मति शब्ददेखि पर रहेको हुनाले ङिका स्थानमा आम् भयो । "आण्नद्याः"ले आट्आगम "आटश्च"ले वृद्धि भयो, यण् भयो, 'मत्याम्' सिद्ध भयो । नदीसंज्ञा नभएको पक्षमा घिसंज्ञा भयो, "औत्"लाई बाधेर "अच्च घेः"ले ङिका स्थानमा औकार मतिका इकारका स्थानमा अकार भयो, वृद्धि भयो, 'मतौ' सिद्ध भयो । ङिमा यसरी यी दुई रूप भए ।

**शेषमिति-** अरू विभक्तिमा मति शब्द हरि शब्द जस्तै हुन्छ ।

**मतिशब्दका रूपहरू-**

| **विभक्ति** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| **प्र.** | मतिः | मती | मतयः |
| **द्वि.** | मतिम् | मती | मतीः |
| **तृ.** | मत्या | मतिभ्याम् | मतिभिः |
| **च.** | मत्यै / मतये | मतिभ्याम् | मतिभ्यः |
| **प.** | मत्याः / मतेः | मतिभ्याम् | मतिभ्यः |
| **ष.** | मत्याः / मतेः | मत्योः | मतीनाम् |
| **स.** | मत्याम् / मतौ | मत्योः | मतिषु |
| **सं.** | हे मते ! | हे मती ! | हे मतयः ! |

**एवमिति-** यस्तै प्रकारले बुद्धिआदि ह्रस्व इकारान्त शव्दका रूप पनि जान्नु ।

**त्रिचतुरोरिति-** स्त्रीलिङ्गमा वर्तमान त्रि,शब्द र चतुर,शब्दका स्थानमा तिसृ आदेश र चतसृ आदेश क्रमैले होऊन् विभक्ति पर भएमा । यहाँ विभक्ति परभएमा नभन्ने हो भने तिसृणां प्रियः- त्रिप्रियः यहाँ पनि त्रिशब्दका स्थानमा तिसृ आदेश होला र 'तिसृप्रियः' यस्तो अनिष्ट रूप होला । सो नहोस् भनेर विभक्तौ भनियो, अतः यहाँ विभक्ति पर नभएकोले तिसृ आदेश भएन 'त्रिप्रियः' यस्तो रूप भयो ।

**अचीति-** तिसृशब्द र चतसृशव्दका ऋकारका स्थानमा रेफ आदेश होस् अच् पर भएमा ।

**गुणदीर्घोत्वानामिति-** यो सूत्रले जस्मा "ऋतो ङिसर्वनामस्थानयोः"ले पाएको गुणलाई, शस्मा "प्रथमयोः पूर्वसवर्णः"ले पाएको पूर्वसवर्ण दीर्घलाई र ङसि र ङस् मा "ऋत उत्"ले पाएको उत्वलाई बाध्छ । त्रिशब्द चतुर्शब्द बहुवचनान्त छन् कसरी ङसि, ङस्, आउँछ ? यो शंकाको उत्तर-प्रियास्तिस्रो यस्याः, प्रियाश्चतस्रो यस्याः, आदि बहुव्रीहि समासमा प्रियत्रि, प्रियचतुर् आदि शब्द बन्दछन् । अनि ती शव्दबाट एकवचन, द्विवचन पनि आउँछन् र त्यहींको निमित्त उत्वको स्मरण गरेको हो ।

**तिस्रः-** त्रिशव्ददेखि स्त्रीत्व विवक्षामा जस् आयो, 'त्रि+अस्'भयो, 'त्रि+अस्' यहाँ स्त्रीलिङ्गमा वर्तमान त्रिशब्द पनि छ विभक्ति पर पनि छ र त्रिका स्थानमा "त्रिचतुरोः स्त्रियां तिसृचतसृ"ले

तिस्रः । तिसृभिः । तिसृभ्यः । तिसृभ्यः । आमि नुट् ॥

**२२५. न तिसृचतसृ ६ । ४ । ४ ॥**

एतयोर्नामि दीर्घो न । तिसृणाम् । तिसृषु ॥ द्वे । द्वे । द्वाभ्याम् । द्वाभ्याम् । द्वाभ्याम् । द्वयोः । द्वयोः ॥ गौरी । गौर्यौ ।

---

तिसृआदेश भयो, आगामी सूत्र "ऋन्नेभ्यो ङीप्"ले पाएको ङीप् "न षट्स्वस्रादिभ्यः" आगामी सूत्रले नै निषेध भयो, अनि 'तिसृ+अस्' यहाँ "इको यणचि"लाई बाधेर "प्रथमयोः०"ले पूर्वसवर्णदीर्घ पायो, त्यसलाई बाधेर "ऋतो ङि०"ले गुण पायो, त्यसलाई बाधेर "अचि र ऋतः"ले 'तिसृ'का ऋकारका स्थानमा रेफ भयो, 'तिस्रस्' भयो, रुत्व विसर्ग भयो, 'तिस्रः' सिद्ध भयो ।

**तिस्रः**– त्रि शब्दको स्त्रीत्वविवक्षामा शस् आयो, 'त्रि+अस्'भयो "त्रिचतुरोः०"ले तिसृ आदेश भयो, 'तिसृ+अस्' भयो, पूर्ववत् ङीप् पाएको निषेध भयो, 'तिसृ+अस्'यहाँ यण्लाई बाधेर पूर्वसवर्णदीर्घ पायो, त्यसलाई बाधेर "अचि र ऋतः"ले तिसृका ऋकारका स्थानमा रेफ आदेश भयो, 'तिस्रस्' भयो, रुत्व, विसर्ग भयो, 'तिस्रः' सिद्ध भयो ।

**तिसृभिः**– स्त्रीत्वविवक्षामा त्रिशब्ददेखि तृतीयाको बहुवचन भिस् आयो, तिसृ आदेश भयो, ङीप्को निषेध, रुत्व विसर्ग भयो, 'तिसृभिः' सिद्ध भयो ।

**तिसृभ्यः२** त्रि शब्ददेखि चतुर्थीको बहुवचन भ्यस् आयो, 'त्रि+भ्यस्' भयो, अनि पूर्ववत् तिसृआदेश भयो, ङीप्निषेध, रुत्व, विसर्ग भयो, 'तिसृभ्यः' रुप सिद्ध भयो ।

**नतिसृ इति**– तिसृ शब्द र चतसृ शब्दका स्थानमा नाम् पर भएमा दीर्घ नहोस् ।

**तिसृणाम्**– त्रि शब्ददेखि षष्ठीको बहुवचन आम् आयो, त्रिका स्थानमा "त्रिचतुरोः०"ले तिसृ आदेश भयो, 'तिसृ+आम्' भयो, ङीप् पाएको निषेध भयो । 'तिसृ+आम्' यहाँ यण्लाई बाधेर "हृस्वनद्यापोः०"ले नुट् भयो । "नामि"ले दीर्घ पाएकोमा "न तिसृचतसृ"ले निषेध भयो, "ऋवर्णान्नस्य णत्वं वाच्यम्"ले णत्व भयो, 'तिसृणाम्' सिद्ध भयो ।

**तिसृषु**– स्त्रीत्व बुझिँदामा त्रिशब्ददेखि सप्तमीको बहुवचन सुप् आयो, 'त्रि+सु' भयो, तिसृ आदेश भयो । "आदेशप्रत्यययोः"ले षत्व भयो 'तिसृषु' सिद्ध भयो ।

**द्वे**– स्त्रीत्वविवक्षामा द्विशब्ददेखि औ आयो, 'द्वि+औ'भयो "त्यदादीनामः"ले द्विका, इकारका स्थानमा अकार भयो, 'द्व+औ' भयो, "अजाद्यतष्टाप्"ले टाप् प्रत्यय, दीर्घ भयो, 'द्वा+औ' "औङ आपः" ले औ का स्थानमा शी भयो, 'द्वा+ई' भयो, "आद्गुणः"ले गुण भयो, 'द्वे' सिद्ध भयो ।

**द्वे**– द्वितीयाको द्विवचन औट्मा पनि 'औ'मा जस्तै प्रक्रिया भएर 'द्वे' यो रूप सिद्ध हुन्छ ।

**द्वाभ्याम्**– स्त्रीत्वविवक्षामा द्विशब्ददेखि तृतीयाको द्विवचन भ्याम् आयो 'द्वि+भ्याम्' भयो, "त्यदादीनामः"ले अत्व भयो टाप् प्रत्यय, दीर्घ भयो, 'द्वाभ्याम्' सिद्ध भयो । चतुर्थीको र पञ्चमीको द्विवचनमा यही प्रक्रिया भयो, द्वाभ्याम्, द्वाभ्याम् यी रूप सिद्ध भए ।

**द्वयोः**– स्त्रीत्वविवक्षामा द्विशब्ददेखि षष्ठीको द्विवचन ओस् आयो, 'द्वि+ओस्' भयो, "त्यदादीनामः"ले अत्व भयो, टाप् भयो, 'द्वा+ओस्' "आङि चापः"ले एकार, अय आदेश भयो, रुत्व, विसर्ग भयो, 'द्वयोः' सिद्ध भयो । सप्तमीको द्विवचनमा पनि यही प्रक्रियाद्वारा 'द्वयोः' सिद्ध हुन्छ ।

**दीर्घ ईकारान्त शब्द– गौरी (पार्वती)**– गौरी शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'गौरी+स्'भयो, स् लाई "अपृक्त एकाल्प्रत्ययः"ले अपृक्तसंज्ञा भयो, ङचन्त गौरीदेखि पर रहेका अपृक्त हल् हुनाले, "हल्ङ्याब्भ्यो०"ले लोप भयो, 'गौरी' सिद्ध भयो ।

**गौर्यौ**– गौरी शब्ददेखि प्रथमाको द्विवचन औ आयो, 'गौरी+औ' भयो, यहाँ "इको यणचि"ले

गौर्यः । हे गौरि । गौर्यौ । इत्यादि ॥ एवं नद्यादयः ॥ लक्ष्मीः । शेषं गौरीवत् ॥ एवं

पाएको यण्लाई बाधेर "प्रथमयोः पूर्वसवर्णः"ले पूर्वसवर्णदीर्घ पाएको "दीर्घाज्जसि च"ले निषेध भयो । "बाधकाभावे०" लगाएर पुनः "इको यणचि"ले यण् भयो, वर्णमेलन भयो 'गौर्यौ' ।

**गौर्यः**– गौरी शब्ददेखि जस् आयो, 'गौरी+अस्' भयो, यहाँ पनि यण्लाई बाधेर पाएको पूर्वसवर्णदीर्घको "दीर्घाज्जसि च"ले निषेध भएपछि यण् भयो, वर्णमेलन भयो, 'गौर्यः' सिद्ध भयो । अम्मा पूर्वसवर्णदीर्घलाई बाधेर "अमि पूर्वः"ले पूर्वरूप भएर 'गौरीम्' भयो । शस्मा पूर्वसवर्णदीर्घ भएर 'गौरीः' भयो ।

**हे गौरि**– गौरी शब्दलाई "यू स्त्र्याख्यौ नदी"ले नदीसंज्ञा भयो, संबोधन अर्थ बुझिँदामा प्रथमाको एकवचन सु आयो, 'गौरी सु' भयो, संबुद्धिसंज्ञा भयो, अनुबन्धलोप भयो, 'गौरी+स्' यहाँ "अम्बार्थनद्योर्ह्रस्वः"ले गौरीका ईकारको ह्रस्व भयो, "एङ्ह्रस्वात्संबुद्धेः"ले सुको सकारको लोप भयो, हे शब्दको पूर्वप्रयोग भयो, 'हे गौरि' भयो । संबोधनको द्विवचन बहुवचनमा 'हे गौर्यौ' 'हे गौर्यः' हुन्छ । यहाँ अरू विशेष कार्य छैन । हे शब्दको पूर्वप्रयोग मात्र विशेष छ ।

**गौर्यै**– गौरी शब्दलाई "यू स्त्र्याख्यौ नदी"ले नदीसंज्ञा भएकै छ गौरीशब्ददेखि चतुर्थीको एकवचन ङे आयो, 'गौरी+ए' भयो । एको "आण्नद्याः"ले आट् आगम भयो, "आटश्च"ले वृद्धि भयो, 'गौरी+ऐ' भयो, "इको यणचि"ले यण् भयो, 'गौर्यै' सिद्ध भयो ।

यस्तै प्रकारले ङसि र ङस्मा आट्, वृद्धि, यण्, भएर 'गौर्याः' यो रूप सिद्ध हुन्छ । 'ङि'मा आम्, आट्, वृद्धि, यण् भएर 'गौर्याम्' सिद्ध हुन्छ ।

आम्मा नुट्, आगम णत्व भएर 'गौरीणाम्' हुन्छ । ओस्मा यण भएर 'गौर्योः' हुन्छ । हलादि-विभक्तिमा विशेष कार्य छैन । सुप्मा "आदेशप्रत्यययोः" ले षत्व हुन्छ, 'गौरीषु' हुन्छ ।

**गौरीशब्दका रूपहरू –**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| प्र. | गौरी | गौर्यौ | गौर्यः | द्वि. | गौरीम् | गौर्यौ | गौरीः |
| तृ. | गौर्या | गौरीभ्याम् | गौरीभिः | च. | गौर्यै | गौरीभ्याम् | गौरीभ्यः |
| पं. | गौर्याः | गौरीभ्याम् | गौरीभ्यः | ष. | गौर्याः | गौर्योः | गौरीणाम् |
| स. | गौर्याम् | गौर्योः | गौरीषु | सं. | हे गौरि ! | हे गौर्यौ ! | हे गौर्यः ! |

एवमिति- यस्तै प्रकारले नदी, जननी, आदि शब्द पनि जान्नु ।

**लक्ष्मीः**- लक्ष्मीशब्ददेखि प्रथमाको एकवचन सु आयो, 'लक्ष्मी+स्' भयो ङ्यन्त नहुनाले "हल्ङ्याब्भ्यो०"ले सुको लोप भएन । सकारको रुत्व विसर्ग भयो, 'लक्ष्मीः' सिद्ध भयो ।

**शेषमिति**- लक्ष्मीशब्दका बाँकी रूप गौरीशब्दका जस्तै हुन्छन् । इयङ् उवङ्को स्थानी नहुनाले नदीसंज्ञा निषेध हुँदैन । नदीसंज्ञा र नदीसंज्ञाका कार्य हुन्छन्, आम्मा नाम्को णत्व र सुप्मा सुका सकारको "आदेशप्रत्यययोः"ले षत्व पनि हुन्छ ।

**लक्ष्मीशब्दका रूपः**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| प्र. | लक्ष्मीः | लक्ष्म्यौ | लक्ष्म्यः | द्वि. | लक्ष्मीम् | लक्ष्म्यौ | लक्ष्मीः |
| तृ. | लक्ष्म्या | लक्ष्मीभ्याम् | लक्ष्मीभिः | च. | लक्ष्म्यै | लक्ष्मीभ्याम् | लक्ष्मीभ्यः |
| प. | लक्ष्म्याः | लक्ष्मीभ्याम् | लक्ष्मीभ्यः | ष. | लक्ष्म्याः | लक्ष्म्योः | लक्ष्मीणाम् |
| स. | लक्ष्म्याम् | लक्ष्म्योः | लक्ष्मीषु | सं. | हे लक्ष्मि ! | हे लक्ष्म्यौ ! | हे लक्ष्म्यः ! |

तरीतन्त्र्यादयः ॥ स्त्री । हे स्त्री ॥

**२२६. स्त्रियाः ६ । ४ । ७९ ॥**

अस्येयङ् स्यादजादौ प्रत्यये परे । स्त्रियौ । स्त्रियः ॥

**२२७. वाम्शसोः ६ । ४ । ८० ॥**

अमि शसि च स्त्रिया इयङ् वा स्यात् । स्त्रियम्, स्त्रीम् । स्त्रियः, स्त्रीः । स्त्रिया ।

---

**एवं तरीति**– तरी, तन्त्री आदि शब्दका पनि यस्तै रूप हुन्छन् ।

**स्त्री**– स्त्रीशब्ददेखि प्रथमाको एकवचन सु आयो, 'स्त्री+स्' भयो, स्लाई अपृक्तसंज्ञा भएपछि "हल्ङ्याब्भ्यो०"ले स्को सकारको लोप भयो 'स्त्री' सिद्ध भयो ।

**हे स्त्रि**– नदीसंज्ञा भएपछि स्त्री शब्ददेखि संबोधन अर्थ बुझिँदामा प्रथमाको एकवचन सु आयो, संबुद्धिसंज्ञा, अनुबन्धलोप भएर 'स्त्री+स्' भयो "अम्बार्थनद्योर्हस्वः"ले स्त्रीका ईकारका स्थानमा ह्रस्व इकार भयो । "एङ्ह्रस्वात्०"ले सकारको लोप भयो, हेशब्दको पूर्व प्रयोग भयो, 'हे स्त्रि !' सिद्ध भयो ।

**स्त्रिया इति**– स्त्री शब्दका स्थानमा इयङ्आदेश होस् अजादिप्रत्यय पर भएमा ।

**स्त्रियौ**– स्त्री शब्ददेखि प्रथमाको द्विवचन औ आयो, 'स्त्री+औ' भयो, यहाँ यण्लाई बाधेर पाएको पूर्वसवर्णदीर्घको "दीर्घाज्जसि च"ले निषेध भएपछि पुनः यण् पायो त्यसलाई बाधेर "स्त्रियाः" यस सूत्रले अजादि प्रत्यय पर हुनाले इयङ् भयो, अनुबन्धलोप भएर इय् बाँकी रह्यो "अलोऽन्त्यस्य" लगाएर स्त्रीका ईकारका स्थानमा इय् पाएकोमा बाधेर "अनेकाल्शित्०"ले 'स्त्री' सबैका स्थानमा इय् पाएकोमा त्यसलाई बाधेर "ङिच्च"ले अन्त्यअल् स्त्रीका ईकारमा स्थानमा इय् भयो 'स्त्रियौ' रूप सिद्ध भयो ।

**स्त्रियः** स्त्री शब्ददेखि प्रथमाको बहुवचन जस् आयो, 'स्त्री+अस्' यहाँ पनि औमा जस्तै बाध्यबाधकभाव भएपछि "स्त्रियाः"ले पूर्ववत् अन्त्य अल् स्त्रीका ईकारका स्थानमा इयङ् भयो, रुत्व, विसर्ग भयो, 'स्त्रियः' सिद्ध भयो ।

**वामीति**– अम् र शस् पर भएमा स्त्री शब्दका स्थानमा इयङ्आदेश विकल्पले होस् ।

**स्त्रियम्/स्त्रीम्**– स्त्री शब्ददेखि द्वितीयाको एकवचन अम् आयो, 'स्त्री+अम्'भयो, यहाँ यण्लाई बाधेर "प्रथमयोः०"ले पूर्वसवर्णदीर्घ पायो त्यसलाई बाधेर "अमि पूर्वः"ले पूर्वरूप पायो, त्यसलाई बाधेर "स्त्रियाः"ले नित्य इयङ् पाएकोमा बाधेर "वाम्शसोः"ले अम् पर भएकोले वैकल्पिक इयङ् भयो, 'स्त्रियम्' सिद्ध भयो । इयङ् नभएको पक्षमा "अमि पूर्वः"ले पूर्वरूप भयो, 'स्त्रीम्' यो रूप सिद्ध भयो ।

**स्त्रियः/स्त्रीः**– स्त्री शब्ददेखि द्वितीयाको बहुवचन शस् आयो, 'स्त्री+अस्' भयो, 'स्त्री+अस्' यहाँ यण्लाई बाधेर पूर्वसवर्णदीर्घ पायो, त्यसलाई बाधेर "स्त्रियाः"ले नित्य इयङ् पायो, त्यसलाई बाधेर "वाम्शसोः" ले शस् पर हुनाले वैकल्पिक इयङ् भयो 'स्त्रियस्' भयो, रुत्व, विसर्ग भयो 'स्त्रियः' यो रूप सिद्ध भयो । इयङ् नभएका पक्षमा "प्रथमयोः पूर्वसवर्णः"ले पूर्वसवर्णदीर्घ भयो, सकारको रुत्व विसर्ग भयो, 'स्त्रीः' सिद्ध भयो ।

**स्त्रिया**– स्त्री शब्ददेखि तृतीयाको एकवचन टा आयो, 'स्त्री+आ' भयो, 'स्त्री+आ' यहाँ, "इको यणचि"ले यण् पायो त्यसलाई बाधेर "स्त्रियाः"ले इयङ् भयो, 'स्त्रिया' सिद्ध भयो ।

---

स्त्रियै । स्त्रियाः । परत्वान्नुट् । स्त्रीणाम् । स्त्रीषु ॥ श्रीः । श्रियौं । श्रियः ॥

२२८. **नेयङुवङ्स्थानावस्त्री १ । ४ । ४ ॥**

इयङुवङोः स्थितिर्ययोस्तावीदूतौ नदीसंज्ञौ न स्तो न तु स्त्री । हे श्रीः ।

---

**स्त्रियै**– स्त्री शब्दलाई "यू स्त्र्याख्यौ नदी"ले नदीसंज्ञा भएकै छ, स्त्रीशब्ददेखि चतुर्थीको एकवचन ङे आयो, 'स्त्री+ए' भयो "आण्नद्याः"ले एको आट् आगम भयो, "आटश्च"ले वृद्धि भयो । 'स्त्री+ऐ' भयो, यहाँ यण्लाई बाधेर "स्त्रियाः"ले इयङ् भयो, 'स्त्रियै' सिद्ध भयो ।

यहाँ ङित् विभक्तिमा वैकल्पिक नदीसंज्ञा गर्ने सूत्र "ङिति ह्रस्वश्च" लाग्दैन किन कि त्यसमा स्त्रीशब्द बाहेक भनिएको छ ।

**स्त्रियाः२**– स्त्री शब्दलाई "यू स्त्र्यारख्यौ०"ले नदीसंज्ञा भएकै छ, पञ्चमीको एकवचन ङसि आयो, 'स्त्री+अस्' भयो, "आण्नद्याः"ले अस्को आट् आगम भयो, "आटश्च"ले वृद्धि भयो, 'स्त्री+आस्' भयो, यहाँ यण्लाई बाधेर "स्त्रियाः"ले इयङ् भयो, 'स्त्रियाः' सिद्ध भयो । ङस्मा पनि यस्तै प्रकारले 'स्त्रियाः' रूप बन्दछ ।

**स्त्रीणाम्**– नदीसंज्ञा भएकै छ स्त्रीशब्ददेखि आम् आयो, 'स्त्री+आम्' भयो । स्त्री आम् यहाँ "इको यणचि"लाई बाधेर "ह्रस्वनद्यापो०"ले नुट् पनि "स्त्रियाः"ले इयङ् पनि पायो, पाएमा "विप्रतिषेधे परं कार्यम्" यो सूत्र लगाएर परत्वात् नुट् भयो, "अट्कुप्वाङ्०"ले णत्व भयो, 'स्त्रीणाम्' सिद्ध भयो ।

**स्त्रियाम्**– स्त्री शब्ददेखि सप्तमीको एकवचन ङि आयो, 'स्त्री+इ' भयो, 'स्त्री+इ' यहाँ "अकः सवर्णेदीर्घः"लाई बाधेर ङिका स्थानमा "ङेराम्नद्याम्नीभ्यः"ले आम् भयो, आम्मा स्थानिवद्भाव गरेर ङित्त्व आएपछि आम्को आट्आगम, इयङ्, भयो, 'स्त्रियाम्' सिद्ध भयो ।

**स्त्रीषु**– स्त्री शब्ददेखि सुप् आयो, 'स्त्री+सु' भयो, "आदेशप्रत्यययोः"ले षत्व भयो, 'स्त्रीषु' सिद्ध भयो ।

**स्त्रीशब्दका रूप**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| प्र. | स्त्री | स्त्रियौ | स्त्रियः | द्वि. | स्त्रियम्/स्त्रीम् | स्त्रियौ | स्त्रियः/स्त्रीः |
| तृ. | स्त्रिया | स्त्रीभ्याम्, | स्त्रीभिः | च. | स्त्रियै | स्त्रीभ्याम् | स्त्रीभ्यः |
| प. | स्त्रियाः | स्त्रीभ्याम्, | स्त्रीभ्यः | ष. | स्त्रियाः | स्त्रियोः | स्त्रीणाम्, |
| स. | स्त्रियाम् | स्त्रियोः | स्त्रीषु | सं. | हे स्त्रि ! | हे स्त्रियौ ! | हे स्त्रियः ! |

**श्रीः (लक्ष्मी)**– श्री शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'श्री+स्' भयो, ङयन्त नभएको हुनाले "हलङ्याब्भ्यो०" लागेन, सकारको रुत्व र विसर्ग भयो, 'श्रीः' सिद्ध भयो ।

**श्रियौ**– श्री शब्ददेखि प्रथमाको द्विवचन औ आयो, 'श्री+औ' भयो, 'श्री+औ' यहाँ यण्लाई बाधेर पूर्वसवर्णदीर्घ पाएकोमा "दीर्घाज्जसि च"ले निषेध भएपछि पुनः यण् पायो बाधेर "अचिश्नुधातु०"ले इयङ्आदेश भयो, 'श्रियौ' सिद्ध भयो ।

**श्रियः**– श्री शब्ददेखि जस् आयो, 'श्री+अस्' भयो पूर्ववत् बाध्यबाधकभाव भैसकेपछि "अचिश्नु०"ले इयङ् भयो, 'श्रियस्' भयो, सकारको रुत्व, विसर्ग भयो, 'श्रियः' सिद्ध भयो ।

**नेयङुवङ् इति**– इयङ् र उवङ्को स्थिति छ जसमा त्यस्ता दीर्घ ईकारान्त र दीर्घ ऊकारान्तशब्द नदीसंज्ञक नहोऊन् स्त्री शब्दलाई छोडेर ।

**हे श्रीः**– श्री शब्दलाई "यूस्त्र्याख्यौ नदी" ले नदीसंज्ञा पाएको "नेयङुवङ्स्थानावस्त्री" यो सूत्रले 'इयङ् उवङ्को स्थानी भएका दीर्घ ईकारान्त दीर्घ ऊकारान्त शब्द नदीसंज्ञक नहोऊन्'

श्रियै, श्रिये । श्रियाः, श्रियः ॥

२२९. **वामि १ । ४ । ५ ॥**

इयङुवङ्स्थानौ स्त्र्याख्यौ यू आमि वा नदीसंज्ञौ स्तो न तु स्त्री । श्रीणाम्, श्रियाम् । श्रियाम्, श्रियि ॥

---

भनेकोले श्रीशब्द इयङ्को स्थानी दीर्घ इकारान्तशब्द हुनाले नदीसंज्ञा निषेध भयो । श्रीशब्ददेखि संबोधन अर्थ बुझिँदामा प्रथमाको एकवचन सु आयो, 'श्री+सु' श्रीशब्दको नदीसंज्ञा निषेध भएको हुनाले "अम्बार्थनद्योर्ह्रस्वः" लागेन, अनुबन्धलोप भयो, ह्रस्व नभएपछि "एङ्ह्रस्वात् सम्बुद्धेः" पनि लागेन । ङ्यन्त नभएको हुनाले "हल्ङ्याब्भ्यो०"लेसुको लोप पनि भएन । सकारका स्थानमा रु भयो, रेफको विसर्ग भयो, हे शव्दको पूर्व प्रयोग भयो, 'हे श्रीः' सिद्ध भयो । सम्बोधनको औ, जस् मा पनि सामान्य औ जस्मा जस्तै प्रक्रिया भएर रूप सिद्ध भएपछि हे शब्दको पूर्वप्रयोग भयो, 'हे श्रियौ' 'हे श्रियः' भयो ।

**श्रियै / श्रिये**- श्री शब्ददेखि चतुर्थीको एकवचन ङे आयो, 'श्री+ए' भयो, यहाँ श्रीशव्दलाई "यू स्त्र्याख्यौ नदी"ले पाएको नित्य नदीसंज्ञा श्रीशव्द इयङ्को स्थानी हुनाले "नेयङुवङ् स्थानावस्त्री"ले निषेध भएपछि "ङिति ह्रस्वश्च"ले वैकल्पिक नदीसंज्ञा भयो, "आण्नद्याः"ले आट्आगम "आटश्च"ले वृद्धि भयो, 'श्री+ऐ' भयो । 'श्री+ऐ' यहाँ यण्लाई बाधेर "अचिश्नुधातु०"ले इयङ् आदेश भयो, 'श्रियै' सिद्ध भयो । नदीसंज्ञा नभएका पक्षमा 'श्री+ए' यहाँ पनि यण्लाई बाधेर इयङ् आदेश भयो, 'श्रिये' भयो, यसरी दुई रूप सिद्ध भए ।

**श्रियाः / श्रियः** श्री शब्ददेखि पञ्चमीको एक वचन ङसि आयो, 'श्री+अस्' भयो । यहाँ श्री शब्दलाई "यूस्त्र्याख्यौ०"ले पाएको नित्य नदीसंज्ञाको "नेयङुवङ्०"ले निषेध भएपछि 'अस्' यो ङित् विभक्ति पर हुनाले "ङिति ह्रस्वश्च"ले वैकल्पिक नदीसंज्ञा भयो, आट् आगम, वृद्धि भयो, 'श्री+आस्' भयो । 'श्री+आस्' यहाँ यण्लाई बाधेर इयङ् भयो, 'श्रियाः', सिद्ध भयो । नदीसंज्ञा नभएको पक्षमा आट् आगम भएन, 'श्री+अस्' यहाँ यण्लाई बाधेर इयङ् भयो, 'श्रियः' भयो, यसरी दुई रूप सिद्ध भए । षष्ठीको एकवचनमा पनि यही प्रक्रियाद्वारा 'श्रियाः'/'श्रियः' यी दुई रूप हुन्छन् ।

**वाऽऽमीति**- इयङ् र उवङ्का स्थानी भएका स्त्रीलिङ्गमा वर्तमान दीर्घ ईकारान्त दीर्घ ऊकारान्त शब्द आम् पर भएमा विकल्पले नदीसंज्ञक होऊन् ।

**श्रीणाम् / श्रियाम्**- श्रीशब्ददेखि षष्ठीको बहुवचन आम् आयो, 'श्री+आम्' भयो, यहाँ श्री शब्दलाई "यू स्त्र्याख्यौ०"ले पाएको नदीसंज्ञा "नेयङुवङ्०"ले निषेध भएपछि "वाऽऽमि"ले आम् पर हुनाले वैकल्पिक नदीसंज्ञा भयो, नदीसंज्ञा भएका पक्षमा इयङ्लाई बाधेर "ह्रस्वनंद्यापो०" ले नुट् भयो "समुद्रे पर्जन्यवल्लक्षणप्रवृत्तिः" लगाएर श्रीका ईकारका स्थानमा "नामि"ले दीर्घ भयो, "अट्कुप्वाङ्०"ले णत्व भयो, 'श्रीणाम्' भयो । नदीसंज्ञा नभएका पक्षमा "अचिश्नु०"ले इयङ् भयो, 'श्रियाम्' यी दुई रूप सिद्ध भए ।

**श्रियाम् / श्रियि**- श्री शब्ददेखि सप्तमीको एकवचन ङि आयो, 'श्री-इ' भयो । यहाँ "यूस्त्र्याख्यौ०"ले पाएको नित्य नदीसंज्ञा नेयङुवङ्ले निषेध भएपछि, "ङिति ह्रस्वश्च"ले वैकल्पिक नदीसंज्ञा भयो । "ङेराम्०"ले ङिका स्थानमा आम् त्यसको आट् आगम वृद्धि भएपछि यण्लाई बाधेर इयङ् भयो, 'श्रियाम्' सिद्ध भयो । नदीसंज्ञा नभएका पक्षमा ङिका स्थानमा आम् भएन । 'श्री+इ' यहाँ "अकः सवर्णे दीर्घः" लाई बाधेर इयङ् भयो, 'श्रियि' सिद्ध भयो । यसरी दुई रूप सिद्ध भए ।

धेनुर्मतिवत् ॥

**२३०. स्त्रियां च ७ । १ । ९६ ॥**

स्त्रीवाची कोष्टुशब्दस्तृजन्तवद्रूपं लभते ॥

**२३१. ऋन्नेभ्यो ङीप् ४ । १ । ५ ॥**

ऋदन्तेभ्यो नान्तेभ्यश्च स्त्रियां ङीप् । कोष्ट्री गौरीवत् ॥

---

**श्रीशब्दका रूप–**

| **विभक्ति** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्र. | श्रीः | श्रियौ | श्रियः |
| द्वि. | श्रियम् | श्रियौ | श्रियः |
| तृ. | श्रिया | श्रीभ्याम् | श्रीभिः |
| च. | श्रियै/श्रिये | श्रीभ्याम् | श्रीभ्यः |
| प. | श्रियाः/श्रियः | श्रीभ्याम् | श्रीभ्यः |
| ष. | श्रियाः/श्रियः | श्रियोः | श्रीणाम्/श्रियाम् |
| स. | श्रियाम्/श्रियि, | श्रियोः | श्रीषु |
| सं. | हे श्रीः ! | हे श्रियौ ! | हे श्रियः ! |

ह्रीशब्द र धीशब्दका रूप पनि श्रीशब्दका जस्तै हुन्छन् ।

**ह्रस्व उकारान्त शब्द– धेनु (गाई)**

**धेनुरिति–** धेनुशब्द, मतिशब्द जस्तै हो । नदीसंज्ञा र घिसंज्ञा दुवैका कार्य धेनु शब्दमा हुन्छन् ।

**धेनु शब्दका रूप–**

| **विभक्ति** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्र. | धेनुः | धेनू | धेनवः |
| द्वि. | धेनुम् | धेनू | धेनूः |
| तृ. | धेन्वा | धेनुभ्याम् | धेनुभिः |
| च. | धेन्वै/धेनवे | धेनूभ्याम् | धेनुभ्यः |
| प. | धेन्वाः/धेनोः | धेनुभ्याम् | धेनुभ्यः |
| ष. | धेन्वाः/धेनोः | धेन्वोः | धेनूनाम् |
| स. | धेन्वाम्/धेनौ | धेन्वोः | धेनुषु |
| सं. | हे धेनो ! | हे धेनू ! | हे धेनवः ! |

**स्त्रियां चेति–** स्त्रीवाचक, कोष्टु शब्दले तृजन्त शब्दको जस्तो रूप प्राप्त गर्दछ ।

**ऋन्नेभ्य इति–** ह्रस्व ऋकारान्त शब्द र नकारान्त शब्ददेखि स्त्रीलिङ्गमा ङीप्प्रत्यय होस् ।

**क्रोष्ट्री–** (स्यालिनी) कोष्टु शब्दको स्त्रीत्व विवक्षामा "स्त्रियां च"ले स्त्रीवाचक क्रोष्टु शब्द तृजन्तले तुल्य रूप पाउँछ, भनेकोले तृच्-प्रत्ययान्त शब्द कर्तृ, हर्तृ, धर्तृ, क्रोष्टृ आदि धेरै छन्, कुनको जस्तो रूप हुने त भने "स्थानेऽन्तरतमः"ले स्थानीको स्थान, अर्थ, गुण, प्रमाणले अतिशयतुल्य आदेश होस् भनेकोले यहाँ स्थानीका स्थानले नियम नभएकोले अर्थमा जाँदा, कोष्टु शब्दको श्रृगालवाचकत्व अर्थ छ । शृगालवाचकत्व अर्थ भएको तृजन्तमा कोष्टृ छ र क्रोष्टुका

भ्रूः श्रीवत् ॥ स्वयम्भूः पुंवत् ॥

स्थानमा क्रोष्टृ आदेश भयो । "ऋन्नेभ्यो ङीप्"ले ह्रस्व ऋकारान्त र नान्त प्रातिपदिकदेखि स्त्रीलिङ्ग मा ङीप् होस् भनेकोले यहाँ ऋदन्त प्रातिपदिक क्रोष्टृ-देखि ङीप् भयो, अनुबन्ध लोप भएर 'क्रोष्टृ+ई' भयो । "इको यणचि"ले यण् भयो, 'क्रोष्ट्री' भयो । क्रोष्ट्रीशब्ददेखि प्रथमाको एकवचन सुआयो, 'क्रोष्ट्री+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, 'क्रोष्ट्री' सिद्ध भयो । औमा 'क्रोष्ट्री+औ' भयो, यण् भयो, 'क्रोष्ट्र्यौ' । जस्मा 'क्रोष्ट्र्यः' हुन्छ ।

**क्रोष्ट्री गौरीवदिति–** क्रोष्ट्रीशब्द गौरीशब्द जस्तै हो । साधनप्रक्रियामा बाध्यबाधक भाव पनि गौरीशब्दमा जस्तै हुन्छ । रूप पनि गौरीशब्दका जस्तै बन्दछन् ।

**दीर्घ ऊकारान्त शब्द–** भ्रू (आँखिभौ)

**भ्रूः श्रीवदिति–** भ्रू शब्द श्रीशब्द जस्तै हो, अर्थात् श्रीशब्दमा इयङ् आदेश हुन्छ भने भ्रू शब्दमा उवङ् हुन्छ । उवङ्को स्थानी हुनाले "यू स्त्र्याख्यौ नदी"ले पाएको नदीसंज्ञा "नेयङुवङ्स्थानावस्त्री"ले निषेध हुन्छ । अतः संबुद्धिमा "अम्बार्थनद्योर्ह्रस्वः"ले ह्रस्व हुदैन । ङित् विभक्तिमा "ङिति ह्रस्वश्च"ले र आम् मा "वाऽऽमि"ले वैकल्पिक नदीसंज्ञा हुन्छ । रूपसिद्धि प्रकिया श्रीशब्दमा जस्तै हुन्छ । दिग्दर्शनार्थ सु, औ र संबुद्धिको रूपसिद्धि प्रकिया तल देखाइन्छ ।

**भ्रूः–** भ्रू शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'भ्रू+स्' भयो, सकारको रुत्व विसर्ग भयो, 'भ्रूः' सिद्ध भयो ।

**भ्रुवौ–** भ्रू शब्ददेखि प्रथमाको द्विवचन औ आयो 'भ्रू+औ' भयो । 'भ्रू+औ' यहाँ "इको यणचि"ले यण् पायो, त्यसलाई बाधेर "प्रथमयोः०"ले पूर्वसवर्णदीर्घ पाएको "दीर्घाज्जसि च"ले निपेध भयो, पुनः यण् पायो, त्यसलाई बाधेर "अचिश्नुश्नुधातु०"ले इयङ् उवङ् भयो, अनुबन्धलोप भयो, इय् उव् भयो । "अलोऽन्त्यस्य" लाएर भ्रूका ऊकारका स्थानमा इय् उव् पायो । त्यसलाई बाधेर "अनेकाल् शित्सर्वस्य"ले भ्रू सबैका स्थानमा इय् उव् पायो, त्यसलाई बाधेर "ङिच्च"ले अन्त्य अल्का स्थानमा इय् उव् दुवै पायो, "स्थानेऽन्तरतमः" लाए र ओष्ठस्थानी भ्रूका उकारका स्थानमा ओष्ठस्थानी उव् आदेश भयो, 'भ्रुव्+औ' भयो, वर्णमेलन भयो, 'भ्रुवौ' सिद्ध भयो ।

**हे भ्रूः–** भ्रू शब्ददेखि सम्बोधनअर्थमा प्रथमाको एकवचन सु आयो 'भ्रू+स्' भयो, भ्रूशब्दलाई"यू स्त्र्याख्यौ०"ले नदीसंज्ञा पाएको "नेयङुवङ्स्थानावस्त्री"ले निषेध भयो । अतः "अम्बार्थनद्योर्ह्रस्वः" "एङ्ह्रस्वात्संबुद्धेः" यी दुवै सूत्र लागेनन् । सकारको रुत्व विसर्ग भयो, हे शब्दको पूर्वप्रयोग 'हे भ्रूः' सिद्ध भयो । भट्टिकाव्यको "हा पितः क्वासि हे सुभ्रु" यो प्रयोग प्रामादिक हो भन्ने शिष्टहरूको भनाइ छ । अथवा विरहवेदनाले गर्दा रामलाई व्याकरणप्रक्रियाको विस्मृति भयो भनेर समाधान गर्न सकिन्छ ।

**भ्रूशब्दका रूप-**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| प्र. | भ्रूः | भ्रुवौ | भ्रुवः | द्वि. | भ्रुवम् | भ्रुवौ | भ्रुवः |
| तृ. | भ्रुवा | भ्रूभ्याम् | भ्रूभिः | च. | भ्रुवै/भ्रुवे | भ्रूभ्याम् | भ्रूभ्यः |
| पं. | भ्रुवाः/भ्रुवः | भ्रूभ्याम् | भ्रूभ्यः | ष. | भ्रुवाः/भ्रुवः | भ्रुवोः | भ्रूणाम्/भ्रुवाम् |
| सं. | भ्रुवाम्/भ्रुवि | भ्रुवोः | भ्रूषु | सं. | हे भ्रूः ! | हे भ्रुवौ ! | हे भ्रुवः ! |

**स्वयम्भूः पुंवदिति-** स्वयम्भू (जगदम्बा, मूल प्रकृति) शब्द पुंलिङ्गमा जस्तो हुन्छ, स्त्रीलिङ्गमा उस्तै हुन्छ । यो नित्यस्त्रीलिङ्ग शब्द हैन, अतः यस शब्दमा नदीसंज्ञासम्बन्धी विधि, निषेध, विकल्प केही हुँदैन । अर्थात् 'स्वभू' शब्दको जस्तै प्रक्रिया र रूप पनि त्यस्तै हुन्छन् ।

**२३२. न षट्स्वस्रादिभ्यः ४ । १ । १० ॥**
डीपटापौ न स्तः ॥
स्वसा तिस्रश्चतस्रश्च ननान्दा दुहिता तथा ।
याता मातेति सप्तैते स्वस्रादय उदाहृताः ॥
स्वसा । स्वसारौ ॥ माता पितृवत् । शसि मातॄः ॥

---

**ह्रस्व ऋकारान्त शब्दहरू–**

**न षट् इति–** षट्संज्ञक शब्द र स्वसृआदि शब्ददेखि ङीप् र टाप् प्रत्यय हुँदैनन् । षट्संज्ञक शब्द-"डति च"ले षट् संज्ञा गरिने कति शब्द र "ष्णान्ताः षट्"ले षट्संज्ञा गरिने षष्, पञ्चन्, सप्तन्, अष्टन् आदि षान्त र नान्त शब्द हुन् । तिनमा नान्त शब्ददेखि "ऋन्नेभ्यो ङीप्"ले ङीप् पाउँछ, त्यसको यो सूत्रले निषेध गर्दछ । अतः यी शब्द स्त्रीलिङ्गमा पनि पुलिङ्गमा जस्तै हुन्छन् ।

**स्वसेति–** स्वसृ आदि शब्दहरू मूलको कारिकामा परिगणन गरेको छ । स्वसृ (बहिनी) तिसृ (तीन स्त्री) चतसृ (चार स्त्री) ननान्दृ (नन्द-पतिकी बहिनी) दुहितृ (छोरी) यातृ (देवरानी जेठानीहरू) मातृ (आमा) यी सात शब्द स्वस्रादि हुन् ।

**स्वसा (वहिनी)–** ऋकारान्तस्त्रीलिङ्ग शब्द हुनाले स्वसृ शब्ददेखि "ऋन्नेभ्यो ङीप्"ले ङीप् पाएकोमा "न षट्स्वस्रादिभ्यः" यो सूत्रले स्वसृशब्द स्वस्रादि गणभित्र पर्ने शब्द हुनाले ङीप्को निषेध भयो, स्वसृ यस्तै रह्यो । स्वसृशब्ददेखि प्रथमाको एकवचन सु आयो, 'स्वसृ+स्' भयो । "ऋतोङि०"लाई बाधेर "ऋदुशनस्पुरुदंसोऽनेहसां च"ले अनङ् भयो, अनुबन्धलोप भयो, "अन् भयो, अन् यो ङित्वात् "अनेकाल् शित्सर्वस्य"लाई बाधेर "ङिच्च"ले स्वसृको अन्त्यअल्-ऋकारका स्थानमा भयो, 'स्वसन्+स्' भयो । "अप्तृन्तृच्स्वसृ०"ले उपधाका स्थानमा दीर्घ भएर आकार भयो, 'स्वसान्+स्' भयो, "हल्ङ्याब्भ्यो०"ले सकारको लोप भयो, "प्रत्ययलोपे०" लगाएर "सुप्तिङन्तं पदम्"ले पदसंज्ञा भएपछि "न लोपः प्रातिपदिकान्तस्य"ले नकारको लोप भयो, 'स्वसा' सिद्ध भयो ।

**स्वसारौ–** स्वसृ शब्ददेखि प्रथमाको द्विवचन औ आयो, 'स्वसृ+औ' भयो, "ऋतो ङिसर्व०"ले स्वसृका ऋकारका स्थानमा अर् गुण भयो, 'स्वसर्+औ' भयो । "अप्तृन्तृच्-स्वसृ०"ले उपधाका स्थानमा दीर्घ आकार भयो, 'स्वसारौ' सिद्ध भयो । शस्मा 'स्वसॄः' हुन्छ । त्यसबाहेक अरू ठाउँमा स्वसृशब्दका रूप धातृ शब्दका जस्तै हुन्छन् । अर्थात् सर्वनामस्थानमा दीर्घ हुन्छ ।

**स्वसृशब्दका रूप–**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| प्र. | स्वसा | स्वसारौ, | स्वसारः | द्वि. | स्वसारम् | स्वसारौ | स्वसॄः |
| तृ. | स्वस्रा | स्वसृभ्याम् | स्वसृभिः | च. | स्वस्रे | स्वसृभ्याम् | स्वसृभ्यः |
| प. | स्वसुः | स्वसृभ्याम् | स्वसृभ्यः | ष. | स्वसुः | स्वस्रोः | स्वसॄणाम् |
| सं. | स्वसरि | स्वस्रोः | स्वसृषु, । | सं. | हे स्वसः ! | हे स्वसारौ ! | हे स्वसारः ! |

**मातेति–** मातृ शब्द पितृशब्द जस्तै हो, ।

**शशीति–** शस्मा भने 'मातॄः' हुन्छ । अर्थात् स्त्रीलिङ्ग हुनाले सकारको स्थानमा नकार हुँदैन । यस्तै प्रकारले ननान्दृ, दुहितृ, शब्दका रूप पनि हुन्छन् । पितृ शब्दमा झैं सुमा अनङ् भएपछि नान्त उपधा हुनाले "सर्वनामस्थाने०"ले दीर्घ हुन्छ । औ जस् अम् औट्मा नप्त्रादि शब्दभित्र नपर्ने हुनाले "अप्तृन्तृच्०"ले दीर्घ हुँदैन । संबुद्धिमा पनि दीर्घको प्रसङ्ग नै छैन ।

---

द्यौर्गोवत् ॥ राः पुंवत् ॥ नौग्लौवत् ॥

**इत्यजन्तस्त्रीलिङ्गाः**

**अथाजन्तनपुंसकलिङ्गाः**

२३३. **अतोऽम् ७ । १ । २४ ॥**

अतोऽङ्गात् क्लीबात्स्वमोरम् । अमि पूर्वः । ज्ञानम् । एङ्ह्रस्वादिति हल्लोपः । हे ज्ञान ॥

---

**ओकारान्त शब्द-**

**द्यौरिति-** द्यो शब्द गो शब्द जस्तै हो । गोशब्द पुलिङ्गमां जस्तै हुन्छ ।

**द्यौः (आकाश)-** द्यो शब्ददेखि सु आयो, 'द्यो+स्' भयो, "गोतो णित्" सुको णिद्वद्भाव भयो, "अचोञ्णिति" ले वृद्धि भयो 'द्यौस्' भयो, सकारको रुत्व, विसर्ग भयो, 'द्यौः' सिद्ध भयो । औ जस् आदि विभक्तिमा रूपसिद्धिप्रक्रिया गो शब्दको जस्तै हो ।

**ऐकारान्त शब्द-** रै (धन)

**राः पुंवदिति-** रैशब्द पुलिङ्गमा जस्तै हुन्छ ।

**औकारान्त शब्द-** नौः (डुङ्गा)

**नौग्लौवदिति-** नौशब्द ग्लौशब्द जस्तै हो ।

**अजन्तस्त्रीलिङ्गप्रकरण सकियो ।**

---

**अब अजन्तनपुंसकलिङ्गप्रकरण आरम्भ गरिन्छ ।**

**अतोऽमिति-** नपुंसकलिङ्गमा वर्तमान ह्रस्वअकारान्त अङ्गदेखि पर रहेका सु र अम्का स्थानमा अम्आदेश होस् । "अमि पूर्वः" ले पूर्वरूप हुन्छ ।

**ज्ञानम्-** ज्ञान शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'ज्ञान+स्' भयो, नपुंसक लिङ्गमा वर्तमान ज्ञान शब्ददेखि पर हुनाले सुको "स्वमोर्नपुंसकात्"ले लुक् पायो त्यसलाई बाधेर "अतोऽम्"ले सुका स्थानमा अम् भयो, 'ज्ञान+अम्' भयो । 'ज्ञान+अम्' यहाँ "अकः सवर्णे०"लाई बाधेर "अतो गुणे"ले पररूप पायो, त्यसलाई बाधेर पूर्वसवर्णदीर्घ पाएकोमा बाधेर "अमि पूर्वः"ले पूर्वरूप भयो, 'ज्ञानम्' सिद्ध भयो ।

**हे ज्ञानः-** ज्ञान शब्ददेखि संबोधन अर्थ बुझिँदामा प्रथमाको एकवचन सु आयो सुलाई 'ज्ञान+स्' भयो, "एकवचनं संबुद्धिः"ले संबुद्धिसंज्ञा भयो । "स्वमोर्नपुंसकात्"ले लुक् पायो, त्यसलाई बाधेर "अतोऽम्"ले सु का स्थानमा अम् भयो, 'ज्ञान+अम्' भयो, "अतो गुणे"लाई बाधेर "अमिपूर्वः"ले पूर्व रूप भयो । "अन्तादिवच्च" लगाएर पूर्वान्तवद्भाव भएपछि म् लाई पर राखेर ज्ञान यसलाई अङ्गसंज्ञा भयो, "एङ् ह्रस्वात्संबुद्धेः"ले सकारको लोप भयो, हे शब्दको पूर्व प्रयोग भयो, 'हे ज्ञान' सिद्ध भयो ।

**२३४. नपुंसकाच्च** ७ । १ । १९ ॥

क्लीबादौङः शी स्यात् । भसंज्ञायाम् ॥

**२३५. यस्येति च** ६ । ४ । १४८ ॥

ईकारे तद्धिते च परे भस्येवर्णावर्णयोर्लोपः । इत्यल्लोपे प्राप्ते । **वा**.(औङः श्यां प्रतिषेधो वाच्यः) । ज्ञाने ॥

**२३६. जश्शसोः शिः** ७ । १ । २० ॥

क्लीवादनयोः शिः स्यात् ॥

**२३७. शि सर्वनामस्थानम्** १ । १ । ४२ ॥

शि इत्येतदुक्तसंज्ञं स्यात् ॥

**२३८. नपुंसकस्य झलचः** ७ । १ । ७२ ॥

झलन्तस्याजन्तस्य च क्लीबस्य नुम् स्यात् सर्वनामस्थाने ॥

---

**नपुंसकादिति**– नपुंसकलिङ्गमा वर्तमान शब्ददेखि पर रहेका औङ्का स्थानमा शी आदेश होस् । भसंज्ञा भएपछि-

**यस्येति**– दीर्घ ईकार र तद्धितसंज्ञक प्रत्यय पर भएमा भसंज्ञक इवर्ण र अवर्णको लोप होस् । यो सूत्रले ज्ञानका अकारको लोप पाएमा ।

**(वा.) औङ इति**– औङ्का स्थानमा आदेश भएको शी पर भएमा "यस्येति च"ले लोप नहोस् भन्नु ।

**ज्ञाने**– ज्ञान शब्ददेखि प्रथमाको द्विवचन औ आयो, 'ज्ञान+औ' भयो, 'ज्ञान+औ' यहाँ "वृद्धिरेचि"लाई बाधेर "प्रथमयोः पूर्वसवर्णः"ले पाएको पूर्वसवर्णदीर्घ "नादिचि"ले निषेध भयो, पुनः वृद्धि पायो, त्यसलाई बाधेर "नपुंसकाच्च"ले नपुंसकलिङ्गमा वर्तमान ज्ञान शब्ददेखि पर रहेकोले औका स्थानमा शी आदेश भयो, शीमा स्थानिवद्भाव भएर सुप्त्वधर्म आएपछि "लशक्वतद्धिते"ले शकारको इत्संज्ञा भएर लोप भयो, 'ज्ञान+ई' यहाँ "यचि भम्"ले अजादिमा हुने [४५] सर्वनामस्थानभिन्न स्वादिप्रत्यय 'ई' पर हुनाले 'ज्ञान'लाई भसंज्ञा भयो, "यस्येति च"ले दीर्घ ईकार पर हुनाले भसंज्ञक अङ्गको अवयव अवर्ण ज्ञानका अकारको लोप पाएमा "औङः[४६] श्यां०" यस वार्तिकले औङ्का स्थानमा आदेश भएको शी पर भएमा लोप नहोस् भनेकोले अकारको लोप भएन, "नादिचि"ले पूर्व सवर्णदीर्घ निषेध भएपछि "आद्गुणः"ले गुण भयो, 'ज्ञाने' यो रूप सिद्ध भयो ।

**जश्शसोरिति**– नपुंसकलिङ्गमा वर्तमान शब्ददेखि पर रहेका जस् र शस्का स्थानमा 'शि' आदेश होस् ।

**शि इति**– जश् र शस्का स्थानमा आदेश भएको 'शि' यो सर्वनामस्थानसंज्ञक होस् ।

**नपुंसकादिति**– झलन्त र अजन्त, नपुंसकलिङ्गमा वर्तमान शब्दको नुम् आगम होस् सर्वनामस्थान पर भएमा ।

---

४५ पुंलिङ्ग र स्त्रीलिङ्गमा सु, औ, जस, अम्, औट् यी पाँच विभक्तिलाई सर्वनामस्थान संज्ञा हुन्छ, नपुंसकलिङ्गमा हुँदैन । वृत्तिमा नै 'अक्लीबस्य' भनेको छ ।

४६ 'श्याम्' इति विभक्तिविशेषणमतो 'शी' इत्यस्य ईदन्तशब्दस्य नित्यस्त्रीत्वम् । "नेयङुवङ्०" इति निषेधो नात्र प्रवर्तते, इयङः स्थानित्वाभावात् ।

**२३९. मिदचोऽन्त्यात्परः १ । १ । ४७ ॥**

अचां मध्ये योऽन्त्यस्तस्मात्परस्तस्यैवान्तावयवो मित्स्यात् । उपधादीर्घः । ज्ञानानि । पुनस्तद्वत् । शेषं पुंवत् ॥ एवं धनवनफलादयः ॥

**२४०. अद्ड्डतरादिभ्यः पञ्चभ्यः ७ । १ । २५ ॥**

एभ्यः क्लीबेभ्यः स्वमोरद्ड्डादेशः स्यात् ॥

---

**मिदच इति–** मित् [47](आगम अथवा प्रत्यय) अच्हरूका मध्यमा जो अन्त्य अच् छ त्यसदेखि पर त्यसकै अन्तको अवयव भएर होस् । 'ज्ञानन्+इ' यहाँ उपधाको दीर्घ हुन्छ ।

**ज्ञानानि–** ज्ञान शब्ददेखि प्रथमाको बहुवचन जस् आयो, 'ज्ञान+अस्'भयो, "जश्शसोः शिः"ले नपुंसकलिङ्गमा वर्तमान शब्द 'ज्ञान'देखि पर रहेको हुनाले असका स्थानमा शि आदेश हुँदा अनेकाल्त्वात् अस् पूरैका स्थानमा 'शि' भयो । शकारको इत् संज्ञा लोप भयो, 'ज्ञान+इ' भयो, 'इ' यसलाई "शि सर्वनाम स्थानम्"ले सर्वनामस्थान संज्ञा भएपछि सर्वनामस्थान पर हुनाले "नपुंसकस्य झलचः"ले ज्ञानको नुम्आगम भयो, मकारको "हलन्त्यम्"ले उकारको "उपदेशे०"ले इत्संज्ञा, लोप भयो, 'न्' भयो, 'न्' कता रहने हो त ? भने "मिदचोऽन्त्यात्परः"ले 'मित् आगम अन्त्य अच्-देखि पर त्यसको अन्तको अवयव भएर हुन्छ' भनेकोले ज्ञानका अकारदेखि पर 'न्'भयो । 'ज्ञानन्+इ' भयो । 'इ'लाई पर राखेर 'ज्ञानन्'को मध्यवर्ती अकारलाई "अलोऽन्त्यात्पूर्व०"ले उपधासंज्ञा भयो "सर्वनामस्थाने०"ले उपधाको दीर्घ भयो 'ज्ञानानि' सिद्ध भयो ।

**पुनस्तद्वत्–** फेरि पनि उस्तै हुन्छ, अर्थात् अम्, औट्, शस्, मा पनि सु, औ, जस्, मा जस्तै प्रक्रिया हुन्छ र ज्ञानम्, ज्ञाने, ज्ञानानि, यी रूप हुन्छन् । नपुंसकलिङ्गमा जुनसुकै शब्दमा पनि प्रथमा विभक्तिका र द्वितीया विभक्तिका रूप समान हुन्छन् ।

**शेषमिति–** बाँकी रहेको स्थलमा पुलिङ्गमा जस्तै हुन्छ । पुंलिङ्गमा अकारान्त (राम) शब्दका जस्ता रूप हुन्छन्, त्यही प्रक्रियाद्वारा ज्ञानशब्दका रूप पनि त्यस्तै बन्दछन् ।

**ज्ञान शब्दका रूप–**

| **विभक्ति** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्र. | ज्ञानम् | ज्ञाने | ज्ञानानि |
| द्वि. | ज्ञानम् | ज्ञाने | ज्ञानानि |
| तृ. | ज्ञानेन | ज्ञानाभ्याम् | ज्ञानैः |
| च. | ज्ञानाय | ज्ञानाभ्याम् | ज्ञानेभ्यः |
| पं. | ज्ञानात्-द् | ज्ञानाभ्याम् | ज्ञानेभ्यः |
| ष. | ज्ञानस्य | ज्ञानयोः | ज्ञानानाम् |
| स. | ज्ञाने | ज्ञानयोः | ज्ञानेषु |
| सं. | हे ज्ञान ! | हे ज्ञाने ! | हे ज्ञानानि ! |

**एवमिति–** यस्तै प्रकारले धन, वन, फल, आदि शब्द पनि जान्नु ।

**अद्डिति–** नपुंसकलिङ्गमा वर्तमान डतरप्रत्ययान्त शब्द, डतमप्रत्ययान्त शब्द, अन्य शब्द, अन्यतर शब्द, इतर यी पाँच शब्ददेखि पर रहेका सु र अम्का स्थानमा अद्ड् आदेश होस् ।

---

४७ आगम नुम्आदि र प्रत्यय श्नम् आदि छन् ।

२४१. **टेः** ६ । ४ । १४३ ॥

डिति भस्य टेर्लोपः । कतरत्, कतरद् । कतरे । कतराणि । हे कतरत् ।

---

**टेरिति**- डकारको इत्संज्ञा हुने प्रत्यय पर भएमा भसंज्ञक अङ्गका टिको लोप होस् ।

**कतरत्/कतरद्**- कतर शब्ददेखि सु आयो, 'कतर+स्' भयो, सुको "स्वमोर्नपुंसकात्"ले लुक् पायो, त्यसलाई बाधेर "अतोऽम्"ले अम् पायो, त्यसलाई बाधेर "अद्ड् डतरादिभ्यः पञ्चभ्यः"ले डतरप्रत्ययान्त कतर शब्ददेखि पर रहेको सु छ र सुको स् का स्थानमा अद्ड् आदेश भयो, डकारको "हलन्त्यम्"ले इत्संज्ञा र "तस्य लोपः"ले लोप भयो, 'कतर+अद्' भयो । कतर यसलाई "यचि भम्"ले सर्वनामस्थान भिन्न अजादि प्रत्यय पर हुनाले भसंज्ञा भयो । "यस्मात् प्रत्ययविधि०"ले अङ्गसंज्ञा पनि भयो, अनि "टेः"ले डित् प्रत्यय अद् पर हुनाले भसंज्ञकअङ्ग"कतर"को टि= 'कतर'का अन्त्य अकारको, लोप भयो, 'कतर्+अद्'-'कतरद्' भयो, "वाऽवसाने"ले वैकल्पिक चर्त्व भयो, 'कतरत्' चर्त्व नभएका पक्षमा 'कतरद्' यी दुई रूप सिद्ध भए ।

**कतरे**- कतर शब्ददेखि औ आयो, 'कतर+औ' भयो, 'कतर+औ' यहाँ ज्ञानशब्दको औमा जस्तै बाध्यबाधकता भएपछि अन्तमा "नपुंसकाच्च"ले औका स्थानामा शी भयो, अनुवन्धलोप भयो, 'कतर+ई' यहाँ ईलाई पर राखेर कतरको भसंज्ञा र अङ्ग संज्ञा भएपछि "यस्येति च" कतरका अन्त्य अकारको लोप पाएमा "औङःश्यां०" यस वार्तिकले निषेध भयो, पूर्वसवर्णदीर्घको "नादिचि"ले निषेध भएपछि, "आद्गुणः"ले गुण भयो, 'कतरे' यो रूप सिद्ध भयो ।

**कतराणि**- कतर शब्ददेखि प्रथमाको बहुवचन जस् आयो, 'कतर+अस्' भयो, यहाँ नपुंसकलिङ्गमा वर्तमान कतर शब्ददेखि पर रहेको जस् हुनाले "जसःशी" लाई वाधेर "जश्शसोःशिः"ले अस्का स्थानमा 'शि' भयो, 'कतर+इ' भयो, 'इ'यसलाई "शि सर्वनामस्थानम्"ले सर्वनामस्थानसंज्ञा भएपछि सर्वनामस्थान पर हुनाले "नपुंसकस्य झलचः"ले कतरको नुम् आगम हुँदा, "मिदचोऽन्त्यात्परः" लाएर कतरको अन्तमा 'न्' भयो, 'कतरन्+इ' भयो, "सर्वनामस्थाने चासंवुद्धौ"ले उपधाको दीर्घ भयो, "अट्कुप्वाङ्०"ले नकारको णत्व भयो, 'कतराणि' सिद्ध भयो ।

**हे कतरत्/हे कतरद्**- कतर शब्ददेखि संवोधन अर्थमा प्रथमाको एकवचन सु आयो, 'कतर+स्' भयो, स् को "स्वमोर्नपुंसकात्"ले लुक् पाएकोमा बाधेर "अतोऽम्"ले अम् पायो, त्यसलाई बाधेर "अद्ड् डतरादिभ्यः०"ले स्का स्थानमा अद्ड् आदेश भयो, कतर यसलाई भसंज्ञा र अङ्गसंज्ञा भयो, "टेः"ले भसंज्ञक अङ्गको अवयव 'टि'-कतरका अन्त्य अकारको लोप भयो, 'कतर्+अद्'=कतरद् भयो । यहाँ कतर यो अङ्ग छैन कतर्, अङ्ग छ अतः अकारान्त अङ्ग देखि पर नहुनाले "एङ्ह्रस्वात् सम्बुद्धेः"ले हल् (दकारको) को लोप भएन, 'कतरद्'का दकारको "वाऽवसाने"ले चर्त्व भयो, हे शब्दको पूर्व-प्रयोग भयो, 'हे कतरत्' सिद्ध भयो । चर्त्व नभएको पक्षमा पनि कतरद् यहाँ हे शब्दको पूर्वप्रयोग भयो, 'हे कतरद्' यसरी दुई रूप सिद्ध भए ।

**विशेष**- हे ज्ञानम् यहाँ ज्ञानको अकार "अमि पूर्वः"ले पूर्वरूप भएर बनेको एकादेश छ, र 'ज्ञान+म्" यहाँ 'म् 'लाई पर राखेर पूर्वान्तवद्भावद्वारा 'ज्ञान' यसलाई अङ्ग संज्ञा हुन्छ र अकारान्त अङ्गदेखि पर रहेको संवुद्धिको अवयव हल् 'म्'को लोप भएर हे ज्ञान, यस्तो रूप वन्दछ ।

तर यहाँ अद्को अकार पूर्वरूप एकादेश भएर बनेको हैन । अद् आदेशको अकार हो । कतरको आफ्नो अकार त टिलोप हुँदा गैसकेको छ र पूर्वान्तवद्भाव हुँदैन । अतः दकारलाई पर राखेर कतरलाई अङ्गसंज्ञा हुँदैन । यहाँ 'अद्'लाई पर राखेर 'कतर्'लाई भने अङ्गसंज्ञा हुन्छ त्यसो गर्दा ह्रस्व अकारान्त अङ्ग भएन, हलन्त अङ्ग भयो । अतः "एङ्ह्रस्वात्सम्बुद्धेः"ले दकारको लोप

शेषं पुंवत् ॥ एवं कतमत् । इतरत् । अन्यत् । अन्यतरत् । अन्यतमस्य त्वन्यतममित्येव । **वा.** (एकतरात्प्रतिषेधो वक्तव्यः) । एकतरम् ॥

**२४२. ह्रस्वो नपुंसके प्रातिपदिकस्य १ । २ । ४७ ॥**

अजन्तस्येत्येव । श्रीपं ज्ञानवत् ॥

---

भएन र कतरद् यस्तै रह्यो । हे शब्दको पूर्वप्रयोग गर्दा हे कतरद् भयो । ज्ञान शब्दको संबुद्धिमा हे ज्ञान भए झैं कतर शब्दको संबुद्धिमा हे कतर यस्तो भएन । यहाँ यो कुरा यसरी बुझ्नु पर्छ ।

अम् औट् शस्मा पनि सु, औ, जस्मा जस्तै कतरत्-द्, कतरे, कतराणि, यी रूप हुन्छन् । ज्ञान शब्द र कतर शब्दमा मात्र हैन कि नपुंसकलिङ्गका सबै शब्दमा सु, औ, जस् र अम्, औट्, शस्का रूप समान हुन्छन् भन्ने कुरा माथि पनि भनिएको छ ।

**शेषमिति-** कतर शब्दमा बाँकी 'टा'देखि सुप्सम्म पुलिङ्गमा सर्वशब्दमा जस्तै प्रक्रिया हुन्छ र रूप पनि सर्वशब्दका जस्तै हुन्छन् । यो कतरशब्द डतरप्रत्ययान्त हुनाले सर्वादिगण भित्र पर्दछ र "सर्वादीनि सर्वनामानि"ले सर्वनामसंज्ञा हुन्छ । अतः ङे, ङसि, ङिका स्थानमा क्रमशः स्मै, स्मात्, स्मिन् आदेश र आम्को सुट् आगम हुन्छ ।

ङे, ङसि, ङि र आम्मा क्रमशः कतरस्मै । कतरस्मात् । कतरस्मिन् । कतरेषाम् । यी रूप हुन्छन् ।

**एवमिति-** यस्तै प्रकारले कतम शब्दको सुमा कतमत्-द् इतरको इतरत्-द् अन्यको-अन्यत्-द्, अन्यतरको-अन्यतरत्-'द्' यी रूप अद्ड् आदेश भएर बन्दछन् । बाँकी रूप पनि कतरशब्दका जस्तै हुन्छन ।

**अन्यतमेति-** अन्यतम शब्दको सुमा त अन्यतमम् यस्तो रूप हुन्छ, किनभने यो डतम प्रत्ययान्तशब्द हैन र अद्ड् आदेश हुँदैन । सुका स्थानमा अम् हुन्छ । सर्वादिगणपठित शब्द नहुनाले ङेआदिका स्थानमा स्मै आदेश पनि हुन्नन् ।

**(वा.) एकतरादिति-** एकतर शब्ददेखि पर रहेको सु र अम्का स्थानमा अद्ड्आदेश नहोस् भन्नु ।

**एकतरम्-** एकतर शब्ददेखि सु आयो, 'एकतर+स्' भयो यहाँ "स्वमोर्नपुंसकात"ले पाएको लुक्लाई बाधेर "अतोऽम्"ले अम् आदेश पाएकोमा बाधेर "अद्ड्डतरादिभ्यः"ले डतरप्रत्ययान्त एकतरशब्ददेखि पर रहेकोले सुका स्थानमा अद्ड् आदेश पाएकोमा "एकतरात्प्रतिषेधो वक्तव्यः" यस वार्तिकले निषेध भएपछि "बाधकाऽभावे०" लगाएर पुनः सुका स्थानमा अम् आदेश भयो, पूर्वरूप भयो, 'एकतरम्' सिद्ध भयो । संबुद्धिमा ज्ञानशब्दमा जस्तै हे एकतर हुन्छ । बाँकी रूप कतरशब्दका जस्तै हुन्छन् ।

**आकारान्त शब्द- श्रीपा (लक्ष्मीको पालन गर्ने वंश आदि)**

**ह्रस्व इति-** नपुंसक लिङ्गमा वर्तमान अजन्त प्रातिपदिकको स्थानमा ह्रस्व आदेश होस् । श्रियं पातीति श्रीपं कुलम् (लक्ष्मीको पालन गर्छ । यो अर्थमा श्रीपा यो कुलको नाम हुन्छ ।)

**श्रीपमिति-** श्रीपा शब्दको ह्रस्व भएर श्रीप भएपछि श्रीप शब्द पूरै ज्ञान शब्द जस्तै हुन्छ । ज्ञान शब्दमा भन्दा बढी कुरा यहाँ णत्व हुने ठाउँमा छ ।

**श्रीपम्-** श्रीपा शब्दको क्लीबत्व विवक्षामा "ह्रस्वो नपुंसके प्रातिपदिकस्य"ले "अलोन्त्यस्य" लगाएर श्रीपाका आकारका स्थानमा ह्रस्व अ,इ,उ,ऋ,लृ सबै पायो, "स्थानेऽन्तरतमः" लगाएर आन्तरतम्यात् श्रीपाका आकारका स्थानमा ह्रस्वअकार भयो, श्रीपशब्द बन्यो । श्रीपशब्ददेखि प्रथमाको एकवचन सु आयो 'श्रीप+स्' भयो, सुको "स्वमोर्नपुंसकात्"ले लुक् पायो, त्यसलाई बाधेर "अतोऽम्"ले सुका स्थानमा अम् भयो, 'श्रीप+अम्' भयो । 'श्रीप+अम्' यहाँ "अकः सवर्णे

---

**२४३. स्वमोर्नपुंसकात् ७ । १ । २३ ॥**

लुक् स्यात् । वारि ॥

**२४४. इकोऽचि विभक्तौ ७ । १ । ७३ ॥**

इगन्तस्य क्लीबस्य नुमचि विभक्तौ । वारिणी वारीणि ।

---

दीर्घः"ले दीर्घ पायो, त्यसलाई बाधेर "प्रथमयोः"ले पूर्वसवर्ण दीर्घ पायो त्यसलाई बाधेर "अमि पूर्वः"ले पूर्व रूप भयो, 'श्रीपम्' सिद्ध भयो ।

**श्रीपाणि**– जस्मा 'श्रीपानि' भएपछि "एकाजुत्तरपदे णः"ले निका नकारको णत्व भएर 'श्रीपाणि' हुन्छ । टामा पनि 'श्रीपेन' भएपछि उक्त सूत्रले णत्व भएर 'श्रीपेण' हुन्छ, आम्मा 'श्रीपानाम्' भएपछि उक्त सूत्रले नै णत्व भएर 'श्रीपाणाम्' बन्दछ । 'श्रीपाणि'मा नुम्को नकार र 'श्रीपेण', 'श्रीपाणाम्' यहाँ विभक्तिको नकार हुनाले णत्व हुन्छ । यहाँ "अट्कुप्वाङ्नुम्व्यवायेऽपि" लाग्दैन किनभने त्यसले निमित्त र नैमित्तिक अखण्डपद भएमा भन्छ । यहाँ श्रीपानि, श्रीपेन, श्रीपानाम्, यहाँ णत्वको निमित्त रेफ श्री पदमा छ, नैमित्तिक नकार पानि, पेन, पानाम्, अर्को पदमा छ अर्थात् श्रीपशब्दमा श्री एकपद हो प अर्को पद हो । 'श्रियं पाति इति'=लक्ष्मीको रक्षा गर्छ, यस विग्रहमा "आतोऽनुपसर्गे कः"ले कर्मवाचक श्रीशब्द उपपद भएको पाधातुदेखि क प्रत्यय भएर श्रीप शब्द बनेको हो ।

"ह्रस्वो नपुंसके०" यो सूत्रले ह्रस्व गरेपछि नपुंसक लिङ्गमा कुनै पनि दीर्घान्त शब्द रहँदैनन् । अदन्त, इदन्त, उदन्त र ऋदन्त मात्र रहन्छन् । दीर्घ ईकार, एकार, ऐकार अन्तमा हुने शब्द ह्रस्व इकारान्त बन्दछन् । दीर्घ ऊकार, ओकार, औकार अन्तमा हुने शब्द ह्रस्व उकारान्त बन्दछन । ॠकारान्त शब्द, ह्रस्व ऋकारान्त बन्दछ । "ह्रस्वो नपुंसक प्रातिपदिकस्य" यसको नियामक सूत्र "एच इग्घ्रस्वादेशे" पनि छ ।

**इकारान्त शब्द**–

स्वमोरिति-नपुंसकलिङ्गमा वर्तमान शब्ददेखि पररहेका सु र अम्को लुक् होस् ।

**वारि**– वारि शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'वारि+स्' भयो, स् को "स्वमोर्नपुंसकात्"ले लुक् भयो, लुक् भनेको के त ? "प्रत्ययस्य लुक्श्लुपः"ले लुक्, श्लु, लुप्, शब्दले गरेको प्रत्ययको लोपलाई तत्तत्संज्ञा हुन्छ भनेकोले सुको लोप भयो, 'वारि' सिद्ध भयो ।

**इक इति**– नपुंसकलिङ्गमा वर्तमान इगन्त शब्दको नुम् होस् अजादिविभक्ति पर भएमा ।

**वारिणी**– वारि शब्ददेखि प्रथमाको द्विवचन औ आयो, 'वारि+औ' भयो, 'औ'का स्थानमा "नपुंसकाच्च"ले शीआदेश भयो, 'वारि+ई' भयो, 'वारि+ई' यहाँ नपुंसकलिङ्गमा वर्तमान इगन्त शब्द छ वारि विभक्ति पर छ 'ई' र "इकोऽचि विभक्तौ" ले वारिको नुम् भयो, अनुबन्धलोप भयो, 'न्' भयो, न् यो मिदचोऽन्त्यात्परः" लाएर वारिको अन्ततर्फ भयो, 'वारिनी' भयो, नकारको "अट्कुप्वाङ्नुम्०" ले णत्व भयो, 'वारिणी' सिद्ध भयो ।

**वारीणि**– वारिशब्ददेखि प्रथमाको बहुवचन जस् आयो, 'वारि+अस्' भयो, नपुंसकलिङ्गमा वर्तमान वारिशब्ददेखि पर रहेकोले "जश्शसोः शिः"ले जस्का स्थानमा "शि" आदेश भयो, शकारको अनुबन्धलोप भयो, 'वारि+इ' भयो इ लाई "शि सर्वनामस्थानम्" ले सर्वनामस्थान सञ्ज्ञा भयो, "नपुंसकस्य झलचः"लाई बाधेर "इकोऽचि विभक्तौ०"ले वारिको नुम् आगम भयो, 'वारिन्+इ' भयो, "सर्वनामस्थाने चासंबुद्धौ" वारिन्का उपधा-इकारका स्थानमा दीर्घ ईकार भयो, 'वारीनि' भयो, "अट्कुप्वाङ्०"ले णत्व भयो, 'वारीणि' सिद्ध भयो ।

न लुमतेत्यस्यानित्यत्वात्पक्षे सम्वुद्धिनिमित्तो गुणः । हे वारे, हे वारि । आङो ना । वारिणा घेर्ङितीति गुणे प्राप्ते । **वा.**(वृद्ध्यौत्वतृज्वद्भावगुणेभ्यो नुम् पूर्वविप्रतिषेधेन) । वारिणे ।

---

**न लुमतेति**– "न लुमताङ्गस्य" भन्ने सूत्र[४८] अनित्य हुनाले एकपक्षमा "ह्रस्वस्य गुणः"ले संबुद्धिनिमित्तक गुण हुन्छ ।

**हे वारे/हेवारि**– वारि शब्ददेखि संवोधन अर्थमा प्रथमाको एकवचन सु आयो, 'वारि+सु' भयो स्वमोर्नपुंसकात् सुको लुक् भयो, 'वारि' भयो । "प्रत्ययलोपे प्रत्ययलक्षणम्" यो सूत्र लाएर "ह्रस्वस्य गुणः"ले लुप्त सु (संबुद्धि) लाई पर मानेर गुण पाएकोमा "न लुमताङ्गस्य"ले 'लुमान् शब्दले लोप भएमा तन्निमित्तक अङ्गकार्य नहोस्' भनेकोले गुण निषेध पाएकोमा ("न लुमतेत्यस्यानित्यत्वात् पक्षे संबुद्धिनिमित्तो गुणः") "इकोऽचि०"मा अचि पढ्नाले "न लुमताङ्गस्य" अनित्य छ भन्ने ज्ञापन गरेकोले, अतः एकपक्षे संबुद्धिनिमित्तक गुण हुन्छ' भनेकोले एकपक्षमा "न लुमताङ्गस्य" सूत्र लागेन "ह्रस्वस्य गुणः"ले गुण हुँदा अन्त्य अल् वारिका इकारका स्थानमा गुण भनेका (अ ए ओ) मध्ये आन्तरतम्यात् एकार भयो, हे शब्दको पूर्वप्रयोग भयो, 'हे वारे' सिद्ध भयो । "न लुमताङ्गस्य" लागेका पक्षमा गुणनिषेध भयो, 'वारि' यस्तै रह्यो । हे शब्दको पूर्वप्रयोग भयो, 'हे वारि' सिद्ध भयो । यसरी दुई रूप भए ।

**आङोनेति**– वारिशब्दलाई घिसंज्ञा हुने हुनाले "आङो नास्त्रियाम्" ले टाका स्थानमा ना आदेश हुन्छ ।

**वारिणा**– वारि शब्दको "शेषो घ्यसखि"ले घिसंज्ञा भयो वारि शब्ददेखि तृतीयाको एकवचन टा आयो, 'वारि+आ' भयो, यहाँ "इको यणचि"ले यण् पायो त्यसलाई वाधेर "इकोऽचि०"ले नुम् पायो त्यसलाई बाधेर "आङो नाऽस्त्रियाम्"ले टाका स्थानमा ना आदेश भयो, 'वारिना' नकारको णत्व भयो, 'वारिणा' सिद्ध भयो ।

**घेर्ङिती ति**– ङे मा "घेर्ङिति"ले गुण पाएमा-

**(वा.) वृद्ध्यौत्वेति**– वृद्धि, औत्व, तृज्वद्भाव, गुण, यी भन्दा पूर्वका विप्रतिषेधले नुम् आगम होस् ।

**वारिणे**– वारि शब्दलाई घिसंज्ञा भएकै छ, वारि शब्ददेखि चतुर्थीको एकवचन ङे आयो, 'वारि+ए' भयो । 'वारि+ए' यहाँ "इको यणचि"ले यण् पायो वाधेर "घेर्ङिति"ले वारिका इकारका स्थानमा गुण पनि पायो, "इकोऽचि विभक्तौ"ले वारिको नुम् आगम् पनि पायो, "विप्रतिषेधे परं कार्यम्" लगाएर "घेर्ङिति"ले गुण पायो, पाएमा "वृद्धचौत्वतृज्वद्भाव०" यस वार्तिकले गुणभन्दा पूर्वको विप्रतिषेधले नुम्आगम हुन्छ भनेकोले "इकोऽचि०"ले वारिको नुम् आगम भयो, अनुवन्ध लोप भयो, "मिदचोऽन्त्यात्परः" लगाएर 'वारिका' इकारदेखि पर न् भयो, 'वारिन्+ए' भयो नकारको णत्व भयो, 'वारिणे' सिद्ध भयो ।

---

४८ "न लुमताङ्गस्य" यो सूत्र अनित्य छ भन्ने कुरा "इकोऽचि विभक्तौ" यस सूत्रमा अचि पढ्नाले आउँछ "इकोऽचि०"मा अचि नपढ्दा हुन्छ के ? हलादिमा नुम् हुन्छ । हलादिमा नुम् भए पनि "नलोपः प्रातिपदिकान्तस्य"ले लोप भै हाल्छ नकारको श्रवण हुँदैन । सुमा "स्वमोर्नपुंसकात्"ले लुक् पहिले हुन्छ, "प्रत्ययलोपे०" लगाएर नुम् पाए पनि "नलुमताङ्गस्य"ले निषेध हुन्छ नुम् हुन सक्दैन । अतः अचि पढ्नु व्यर्थ भयो र "व्यर्थं सत् किञ्चिज्ज्ञापयति" (व्यर्थ भएपछि केही जनाउँछ) भनेकाले के जनायो ? "न लुमताङ्गस्येति सूत्रमनित्यम्" (न लुमताङ्गस्य भन्ने सूत्र अनित्य छ) यो जनायो । यो जनाएपछि सुमा त्यो नलाग्ने भयो, नलाग्ने भएपछि नुम् पाउने भयो, नुम्को निवारणका लागि अचि पढ्नु पर्‍यो । अचि पढेपछि नुम् वारण भयो, ठीक छ, फल के त ? फल पनि यहीं छ "वारि शब्दकै सम्वुद्धिमा "न लुमताङ्गस्य" नलागे पछि लुक्ले लुप्त भएको भए पनि सो पर मानेर "ह्रस्वस्य गुणः"ले एकपक्षमा वारिको गुण हुन्छ र 'हे वारे !' यो रूप हुन्छ ।

---

वारिणः । वारिणोः । नुमचिरेति नुट् । वारीणाम् । वारिणि । हलादौ हरिवत् ॥

**२४५. अस्थिदधिसक्थ्यक्ष्णामनङुदात्तः ७ । १ । ७५ ॥**

एषामनङ् स्याट्टादावचि ॥

**२४६. अल्लोपोऽनः ६ । ४ । १३४ ॥**

अङ्गावयवोऽसर्वनामस्थानयजादिस्वादिपरो योऽन् तस्याकारस्य लोपः । दध्ना ।

---

**वारिणः**- वारि शब्ददेखि पञ्चमीको एकवचन ङसि आयो, 'वारि+अस्' भयो, वारि यसलाई घिसंज्ञा छँदै छ, "इको यणचि"लाई बाधेर "घेर्ङिति"ले गुण र "इकोऽचि"ले नुम् पनि पायो, "विप्रतिषेधे परं कार्यम्" लगाएर परत्वाद् गुण पायो, पाएमा "वृद्धचौत्व०" यस वार्तिकले गुणभन्दा पूर्वका विप्रतिषेधले नुम् हुन्छ भनेकोले "इकोऽचि०"ले वारिको नुम्भयो, अनुबन्ध लोप भयो, "मिदचो०" लाएर वारिका इकारदेखि पर न् भयो, 'वारिन्+अस्' भयो, नकारको णत्व र सकारको रुत्व, विसर्ग भयो, 'वारिणः' सिद्ध भयो ।

**वारिणः** वारि शब्ददेखि ङस् आयो, 'वारि+अस्' भयो, पूर्ववत् ङसिमा जस्तै सबै प्रक्रिया भयो, 'वारिणः' सिद्ध भयो ।

**वारिणोः** वारि शब्ददेखि षष्ठीको द्विवचन ओस् आयो, 'वारि+ओस्' भयो, 'वारि+ओस्' यहाँ "इको यणचि"ले यण् पायो त्यसलाई बाधेर "इकोऽचि०"ले नुम् भयो, 'वारिन्+ओस्' भयो, नकारको णत्व र सकारको रुत्व, विसर्ग भयो, 'वारिणोः' सिद्ध भयो ।

**वारीणाम्**- वारि शब्ददेखि षष्ठीको बहुवचन आम् आयो, 'वारि+आम्' भयो । 'वारि+आम्' यहाँ "इको यणचि"ले यण् पायो, त्यसलाई बाधेर "ह्रस्वनद्यापो नुट्"लाई बाधेर परत्वात् "इकोऽचि०"ले नुम् आगम पाएकोमा "नुमचिरतृज्वद्भावेभ्यो०" यस वार्तिकले पूर्वका विप्रतिषेधले नुट् हुन्छ भनेकोले "ह्रस्वनद्यापो०"ले नुट् भयो, 'वारि+नाम्' "नामि"ले दीर्घ भयो, 'वारीनाम्' भयो, "अट्कुप्वाङ्०"ले नकारको णत्व भयो, 'वारीणाम्' सिद्ध भयो ।

यहाँ "इकोऽचि०"ले नुम् गर्दा वारिन् यो अङ्ग हुन्छ, पर आम् हुन्छ, अतः "नामि"ले दीर्घ हुँदैन । नुट् गर्दा वारि यो अङ्ग हुन्छ, नाम् पर रहन्छ र नामिले दीर्घ हुन्छ । इकारको "नामि"ले दीर्घ गर्नु परेकोले नुम्लाई बाधेर नुट् गरेको हो ।

**वारिणि**- वारि शब्ददेखि सप्तमीको एकवचन ङि आयो, 'वारि+इ' भयो । 'वारि+इ' यहाँ "अकः सवर्णे०"ले दीर्घ पायो त्यसलाई बाधेर "अच्च घेः"ले ङिका स्थानमा औकार र वारिका इकारका स्थानमा अकार पायो, "इकोऽचि०"ले नुम् पनि पायो, परत्वात् "अच्च घेः"ले औकार पाएकोमा "वृद्धचौत्वतृज्वद्भाव०" यो वार्तिक लाएर पूर्वविप्रतिषेध-"इकोऽचि०"ले नुम् भयो, 'वारिन्+इ' भयो, णत्व भयो, 'वारिणि' सिद्ध भयो ।

**हलादाविति**- हलादिविभक्ति पर भएमा वारिशब्द हरि शब्द जस्तै हुन्छ ।

**अस्थिदधीति**- अस्थि शब्द, दधि शब्द, सक्थि शब्द, अक्षि शब्दका स्थानमा उदात्त अनङ् आदेश होस् टा आदि अजादि विभक्ति पर भएमा । दधि शब्दका सु आदि शस्सम्म वारि शब्दका जस्तै रूप हुन्छन् ।

**अल्लोप इति**-अङ्गको अवयव, सर्वनामस्थान भिन्न यकार आदिमा हुने र अच् आदिमा हुने स्वादि प्रत्यय पर भएको जो अन् त्यसका अकारको लोप होस् ।

**दध्ना**- दधि शब्दको घिसंज्ञा भएपछि दधि शब्ददेखि तृतीयाको एकवचन टा आयो, 'दधि+आ' भयो, 'दधि+आ' यहाँ "इको यणचि"ले यण् पायो, त्यसलाई बाधेर "इकोऽचि०"ले नुम्

---

दध्ने । दध्नः । दध्नः । दध्नोः । दध्नोः । दध्नाम् ॥

**२४७. विभाषा ङिश्योः ६ । ४ । १३६ ॥**

अङ्गावयवोऽसर्वनामस्थानयजादिस्वादिपरो योऽन् तस्याकारस्य लोपो वा स्यात् ङिश्योः परयोः । दध्नि, दधनि । शेषं वारिवत् ॥ एवमस्थिसक्थ्यक्षीणि ॥

---

पायो, त्यसलाई बाँधेर "आङो ना०"ले ना आदेश पायो, त्यसलाई बाधेर "अस्थिदधि०"ले अनङ् भयो, अनुबन्धलोप भयो अन् भयो अन् यो "अलोऽन्त्यस्य" ले दधिका इकारका स्थानमा पायो, त्यसलाई बाधेर "अनेकाल्०" ले दधि सबैका स्थानमा पाएकोमा बाधेर "ङिच्च"ले अन्त्य अल्- दधिका इकारका स्थानमा भयो, 'दधन्+आ' भयो । यहाँ "अल्लोपोऽनः"ले सर्वनामस्थानभिन्न अजादि प्रत्यय पर हुनाले दधन्का अन्को अकारको लोप भयो, 'दध्न्+आ'-'दध्ना' सिद्ध भयो ।

**दध्ने**- दधि शब्ददेखि चतुर्थी एकवचन ङे आयो, 'दधि+ए' भयो, यहाँ यण्लाई बाधेर "घेर्ङिति"ले गुण पाएकोमा बाधेर "इकोऽचि०"ले नुम् पायो, त्यसलाई बाधेर "अस्थिदधि०"ले अनङ् भयो, 'दधन्+ए' भयो, "अल्लोपोऽनः"ले अकार लोप भयो, 'दध्ने' सिद्ध भयो ।

**दध्नः**- दधि शब्ददेखि पञ्चमीको एकवचन ङसि आयो, 'दधि+अस्' भयो, पूर्ववत् यण्लाई बाधेर गुण, गुणलाई बाधेर, नुम् पाएमा नुम्लाई बाधेर "अस्थिदधि०"ले अनङ् भएपछि "अल्लोपोऽनः"ले अकारलोप भयो, 'दध्नस्', रुत्व विसर्ग भयो, 'दध्नः' सिद्ध भयो । ङस्मा यही प्रक्रिया भए र 'दध्नः' सिद्ध भयो ।

**दध्नोः**- दधि शब्ददेखि षष्ठीको द्विवचन ओस् आयो, यण्लाई बाधेर "इकोऽचि०"ले नुम् पायो, त्यसलाई बाधेर "अस्थिदधि०"ले अनङ् भयो, 'दधन्+ओस्' भयो, "अल्लोपोऽनः"ले अकारको लोप भयो, रुत्व विसर्ग भयो, 'दध्नोः' सिद्ध भयो । सप्तमीको द्विवचनमा पनि यही प्रक्रियाद्वारा यही रूप हुन्छ ।

**दध्नाम्**- दधि शब्ददेखि षष्ठीबहुवचन आम् आयो, 'दधि+आम्' भयो, 'दधि+आम्' यहाँ "इको यणचि"लाई बाधेर "इकोऽचि०"ले नुम् पायो, त्यसलाई बाधेर "ह्रस्वनद्यापो०"ले नुट् पाएकोमा बाधेर पूर्ववत् अनङ् र अकारलोप भयो, 'दध्नाम्' सिद्ध भयो ।

**विभाषेति**- अङ्गको अवयव, सर्वनामस्थानभिन्न यकार आदिमा हुने र अच् आदिमा हुने स्वादिप्रत्यय पर भएको जो अन् त्यसका अकारको लोप होस् ङि र शी पर भएमा ।

**दध्नि/दधनि**- दधि शब्ददेखि सप्तमीको एकवचन ङि आयो, 'दधि+इ' भयो, यहाँ "अकः सवर्णे०"लाई बाधेर "घेर्ङिति"ले गुण पाएकोमा बाधेर "इकोऽचि०"ले नुम् पायो, त्यसलाई बाधेर "अस्थिदधि०"ले अनङ् भयो, 'दधन्+इ' भयो, यहाँ "अल्लोपोऽनः"ले अन्को नित्य लोप पायो, त्यसलाई बाधेर "विभाषा ङिश्योः"ले वैकल्पिक लोप भयो, 'दध्नि' सिद्ध भयो । अकारको लोप नभएमा 'दधनि' यी दुई रूप सिद्ध भए ।

[४९]**शेषमिति**- बाँकी दधि शब्दका रूप वारि शब्दका जस्तै हुन्छन् ।

**एवमिति**- यस्तै प्रकारले अस्थि, सक्थि, अक्षि शब्द पनि जान्नू ।

**ईकारान्त शब्द**- सुधी=सुधि (विद्वान्हरू भएको कुल)

क्लीबलिङ्गमा वर्तमान 'सुधी' यसको "ह्रस्वो नपुंसके प्रातिपदिकस्य"ले "अलोऽन्त्यस्य" लाएर अन्त्य अल् ईकारका स्थानमा ह्रस्व भनेका अ,इ,उ,ऋ,लृ सबै पायो, आन्तरतम्यात् सुधीका

---

४९ मूलमा 'दध्नाम्' यो रूप न दिइकन शेषं वारिवत् भन्दा आम्मा दधीनाम् हुने हो कि भन्ने शङ्का पाठकलाई हुनसक्छ, तर नुट्लाई परत्वात् अनङ्ले बाध्छ अकारको लोप हुन्छ र 'दध्नाम्' हुन्छ । अतः मूलमा 'दध्नाम्' यो रूप दिनु ठीक हुन्छ ।

सुधि । सुधिनी । सुधीनि । हे सुधे, हे सुधि ॥

**२४८. तृतीयादिषु भाषितपुंस्कं पुंवद्गालवस्य ७ । १ । ७४ ॥**

प्रवृत्तिनिमित्तैक्ये भाषितपुंस्कमिगन्तं क्लीबं पुंवद्वा टादावचि । सुधिया, सुधिनेत्यादि ॥

---

दीर्घ ईकारका स्थानमा ह्रस्व इकार भयो र सुधि ह्रस्व इकारान्त शब्द शब्द बन्यो ।

**सुधि, सुधिनी, सुधीनि-** सुधि शब्ददेखि सु आयो, 'सुधी+स्' भयो, वारिशब्दवत् बाध्य बाधकता भएपछि "स्वमोर्नपुंसकात्"ले सुको लुक् भयो, 'सुधि' सिद्ध भयो । यस्तै प्रकारले औ, जस्मा पनि वारि शब्दमा जस्तै प्रक्रिया भयो र 'सुधिनी' 'सुधीनि' यी दुई रूप भए । अम् औट शस्मा पनि 'सुधि' 'सुधिनी' 'सुधीनि' यिनै रूप भए ।

**हे सुधे/हे सुधि-** सुधि शब्ददेखि संबोधन अर्थमा प्रथमाको एकवचन सु आयो लुक् भयो "न लुमताङ्गस्य" यो सूत्र अनित्य भएकोले एक पक्षमा वारि शब्दमा जस्तै गुण भयो, हे शब्दको पूर्व प्रयोग भयो, 'हे सुधे !' सिद्ध भयो । गुण नभएको पक्षमा सुधि यहाँ 'हे'शब्दको पूर्व प्रयोग भयो, 'हे सुधि !' सिद्ध भयो ।

**तृतीयादिष्विति-** प्रवृत्तिनिमित्त एक भएमा भाषितपुंस्क इक् अन्तमा हुने नपुंसकलिङ्गमा वर्तमान शब्दको पुंवद्भाव विकल्पले होस् टा आदि अजादि विभक्ति पर भएमा । गालवका मतमा पुंवद्भाव हुन्छ पाणिनिको मतमा हुँदैन । अतः विकल्पले पुंवद्भाव होस् भन्ने अर्थ वृत्तिकारले गरेका छन् ।

सुधी शब्दको सुष्ठु धीर्यस्य सुष्ठु ध्यायति वा 'सुधीर्महाराजः' । सुष्ठु धीर्यस्य सुष्ठु ध्यायति वा 'सुधि कुलम्' । यहाँ महाराजको विशेषणमा असल बुद्धि भएको वा राम्रो ध्यान गर्ने यही प्रवृत्तिनिमित्त छ । कुलको विशेषणमा पनि असल बुद्धि भएको यही प्रवृत्तिनिमित्त छ र पुंवद्भाव हुन्छ । अर्थात् दुवैमा सुबुद्धिमत्व वा सुष्ठु ध्यानकर्तृत्व प्रवृत्तिनिमित्त एउटै भएकोले पुंवद्भाव हुन्छ ।

प्रवृत्तिनिमित्त त्यसलाई भनिन्छ, जो शब्दको प्रयोगको कारण छ । जुन निमित्तलाई लिएर शब्दको प्रयोग गरिन्छ । अनि भाषितपुंस्क शब्द त्यो हो, पुंलिङ्गमा त्यो शब्दको जो अर्थ छ नपुंसकलिङ्गमा पनि त्यही अर्थमा प्रयोग हुने शब्द, अर्थात् उही अर्थमा पुंलिङ्ग नपुंसकलिङ्ग दुवैमा रहने शब्द । भाषितपुंस्क अर्थात् जसको पुंस्त्व पुलिङ्गमा भाषित (कथित) भैसकेको छ । यही कुरा तलको कारिकामा अत्यन्त स्पष्ट गरेर बुझाएको छ ।

"यन्निमित्तमुपादाय पुंसि शब्दः प्रवर्तते । क्लीबवृत्तौ तदेव स्यादुक्तपुंस्कं तदुच्यते ॥
पीलुर्वृक्षः फलं पीलु पीलुने नहि पीलवे । वृक्षे निमित्तं पीलुत्वं तज्जत्वं तत्फले पुनः ॥" इति

जो निमित्त लिएर पुलिङ्गमा शब्द प्रवृत्त हुन्छ । नपुंसक लिङ्गमा रहँदा पनि त्यसको निमित्त त्यही नै भयो भने त्यस शब्दलाई भाषितपुंस्क भनिन्छ । पीलु शब्दले ओखरको रूख लाई पनि कहन्छ र फललाई पनि । तर यो शब्द भाषितपुंस्क न हुनाले यसको नपुंसकलिङ्गमा पुंवद्भाव हुँदैन, 'पीलुने' यो रूप हुन्छ । 'पीलवे' यो रूप हुँदैन । किनकि वृक्षलाई कहँदा पीलु शब्दको प्रवृत्तिनिमित्त 'पीलुत्व' छ । त्यसको फललाई कहँदा पीलु शब्दको प्रवृत्तिनिमित्त 'पीलुजत्व' छ । अतः प्रवृत्तिनिमित्त फरक भएकोले फलवाचक नपुंसक पीलु शब्दको पुंवद्भाव भएन र 'पीलवे' यो रूप पनि भएन ।

**सुधिया/सुधिना-** सुधि शब्ददेखि तृतीयाको एकवचन टा आयो, । 'सुधि+आ' भयो, भएपछि "तृतीयादिषु भाषितपुस्कम्०"ले पुंलिङ्गमा र क्लीबलिङ्गमा प्रवृत्तिनिमित्त सुबुद्धिमत्व वा सुष्ठु ध्यानकर्तृत्व यौटै भएकोले यहाँ अजादि विभक्ति टा पर छ र वैकल्पिक पुंवद्भाव भयो, पुंवद्भाव भएको पक्षमा 'सुधि+आ' यहाँ "इको यणचि"ले यण् पायो, त्यसलाई बाधेर "अचि श्नुधातु०"ले

मधु । मधुनी । मधूनि । हे मधो, हे मधु ॥ सुलु । सुलुनी । सुलूनि । सुलुनेत्यादि ॥

---

इयङ्,उवङ् पायो, त्यसलाई बाधेर "एरनेकाचः०"ले यण् पायो, यणको "नभूसुधियोः०"ले निषेध भएपछि "बाधकाभावे०" लगाएर इयङ भयो, 'सुधिया' सिद्ध भयो । पुंवद्भाव नभएको पक्षका इयङ्लाई बाधेर "इकोऽचि विभक्तौ"ले नुम् पायो, त्यसलाई बाधेर "आङोनाऽस्त्रियाम्"ले ना आदेश भयो, 'सुधिना' यसरी दुई रूप भए । अरू ङे आदि सबै अजादि विभक्ति पर भएमा पुंवद्भावपक्षमा इयङ् र पुंवद्भाव नभएको पक्षमा "इकोऽचि०"ले नुम् भएर दुई दुई रूप बन्दछन् ।

**सुधी = सुधि शब्दका रूप-**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र. | सुधि | सुधिनी | सुधीनि |
| द्वि. | सुधि | सुधिनी | सुधीनि |
| तृ. | सुधिया / सुधिना | सुधिभ्याम् | सुधिभिः |
| च. | सुधिये / सुधिने | सुधिभ्याम् | सुधिभ्यः |
| प. | सुधियः / सुधिनः | सुधिभ्याम् | सुधिभ्यः |
| ष. | सुधियः / सुधिनः | सुधियोः / सुधिनोः | सुधियाम् / सुधीनाम् |
| स. | सुधियि / सुधिनि | सुधियोः / सुधिनोः | सुधिषु |
| सं. | हे. सुधे / हे सुधि ! | हे सुधिनी ! | हे सुधीनि ! |

**उकारान्त शब्द- मधु (मह)**

**मधु**-मधु शब्ददेखि सु आयो, 'मधु+स्' भयो, "स्वमोर्नपुंसकात्"ले लुक् भयो, 'मधु' सिद्ध भयो ।

**मधुनी**- मधु शब्ददेखि औ आयो, 'मधु+औ' भयो, "नपुंसकाच्च"ले औका स्थानमा 'शी' भयो, अनुबन्धलोप भयो, "इकोऽचि०"ले नुम् भयो, 'मधुनी' सिद्ध भयो ।

**मधूनि**- मधु शब्ददेखि जस् आयो, "जश्शसोः शिः"ले जस्का स्थानमा शि आदेश भयो, 'मधु+इ' भयो, 'इ'लाई "शि सर्वनाम०"ले सर्वनामस्थानसंज्ञा भयो "नपुंसकस्य झलचः"लाई बाधेर "इकोऽचि०"ले नुम् भयो, "सर्वनामस्थाने चा०"ले दीर्घ भयो, 'मधूनि' यो रूप सिद्ध भयो । पुनस्तद्वत्-फेरि पनि अम् औट् शस्मा उस्तै 'मधु' 'मधुनी' 'मधूनि' हुन्छ । अन्यत्र पनि वारि शब्दमा जस्तै प्रक्रिया हुन्छ ।

सुलू शब्दको क्लीबलिङ्गमा "ह्रस्वो नपुंसके०"ले ह्रस्व हुँदा 'सुलु' ह्रस्व उकारान्त भयो ।

**सुलु**- सुलु शब्ददेखि सु आयो, "स्वमोर्नपुंसकात्"ले लुक् भयो सुलु । औ, जस्का सुलुनी, सुलूनि । शस् सम्मका रूप मधु शब्दमा जस्तै हुन्छन् । साधनप्रक्रिया पनि त्यस्तै हो ।

**सुल्वा/सुलुना**- सुलु शब्ददेखि तृतीयाको एकवचन टा आयो, 'सुलु+आ' भयो, सुलु शब्दको सुष्ठु लवनकर्तृत्व प्रवृत्तिनिमित्त पुलिङ्गमा र यहाँ यौटै भएकोले "तृतीयादिषु०"ले वैकल्पिक पुंवद्भाव भयो । पुंवद्भाव भएको पक्षमा 'सुलू' दीर्घ नै हुन्छ । "इको यणचि" आदि सूत्रको बाध्यबाधकभावानन्तर "ओः सुपि"ले यण् भयो, 'सुल्वा' यण् नभएका पक्षमा "आङो नाऽस्त्रियाम्"ले ना आदेश भयो, 'सुलुना' यी दुई रूप भए । यस्तै प्रकारले अजादि विभक्तिमा पुंवद्भाव विकल्पले हुन्छ । पुंवद्भाव भएको पक्षमा "ओः सुपि"ले यण् हुन्छ । पुंवद्भाव नभएको पक्षमा "इकोऽचि०"ले नुम् हुन्छ र दुई दुई रूप हुन्छन् । हलादि विभक्तिमा विशेषकार्य छैन सुधि शब्दमा जस्तै प्रक्रिया हुन्छ ।

धातृ । धातृणी । धातृणि । हे धातः, हे धातृ । धातृणाम् ॥ एवं ज्ञात्रादयः ॥

**२४९. एच इग्घ्रस्वादेशे १ । १ । ४८ ॥**

आदिश्यमानेषु ह्रस्वेषु एच इगेव स्यात् । प्रद्यु । प्रद्युनी । प्रद्यूनि । प्रद्युनेत्यादि ॥

---

**ऋकारान्तशब्द धातृ**– (धारणकर्ता)

**धातृ**– धातृ शब्ददेखि सु आयो, सुको "स्वमोर्नपुंसकात्"ले लुक् भयो धातृ सिद्ध भयो ।

**धातृणी**– धातृ शब्ददेखि औ आयो, शी आदेश नुम् "ऋवर्णान्नस्य०"ले णत्व भयो, 'धातृणी' सिद्ध भयो ।

धातृ शब्ददेखि प्रथमाको बहुवचन जस् आयो, जस्का स्थानमा शि, नुम्, उपधादीर्घ, णत्व, भयो र, 'धातृणि' यो रूप सिद्ध भयो ।

**हे धातः**, हे धातृ, धातृ शब्ददेखि संबोधन अर्थमा प्रथमाको एकवचन सु. आयो, लुक् भयो, "न लुमताङ्गस्य" अनित्य भएको पक्षमा "ह्रस्वस्य गुणः"ले अर् गुण भयो, 'हे धातः', गुण नभएको पक्षमा 'हे धातृ' सिद्ध भयो ।

**धात्रा/धातृणा**– धातृ शब्ददेखि तृतीयाको एकवचन टा आयो, 'धातृ+आ' भयो, पुंलिङ्गमा र नपुंसकलिङ्गमा प्रवृत्तिनिमित्त (धारणकर्तृत्व) एकै भएकोले "तृतीयादिषु भाषितपुंस्कं०"ले पुंवद्भाव भयो, पुंवद्भाव भएको पक्षमा क्लीबत्व नहुनाले "इकोऽचि०"ले नुम् भएन "इको यणचि"ले यण् भयो, 'धात्रा' सिद्ध भयो । पुंवद्भाव नभएको पक्षमा क्लीबत्वात् "इकोऽचि०"ले नुम् भयो णत्व भयो, 'धातृणा' सिद्ध भयो ।

**धातृणाम्**– धातृ शब्ददेखि आम् आयो, 'धातृ+आम्' भयो, पुंवद्भाव भएको पक्षमा यण्लाई बाधेर "ह्रस्वनद्यापो०"ले नुट् भयो, पुंवद्भाव नभएको पक्षमा क्लीबत्वमा पनि "नुमचिरतृज्वद्भाव" यो वार्तिक लगाएर नुट् नै भएर उभयपक्षमा 'धातृ+नाम्' भयो, नामिले दीर्घ र णत्व भयो, 'धातृणाम्' यौटै रूप भयो । पुंवद्भाव पक्षमा सुधी शब्दमा "अचि श्नु"ले नुट्लाई बाधेर इयङ् हुन्थ्यो, त्यस्तै सुलु शब्दमा नुट्लाई बाधेर उवङ्लाई पनि बाधेर "ओः सुपि" ले यण् हुन्थ्यो र सुधियाम्, सुल्वाम् यी रूप र पुंवद्भाव नभएको पक्षमा "नुमचिर०" लाएर नुट् हुँदा सुधीनाम्, सुलूनाम्, यसरी दुई दुई- रूप हुन्थे । तर यहाँ धातृ शब्दमा पुंवद्भाव भएको पक्षमा पनि नुट् आगम हुने र पुंवद्भाव नभएको पक्षमा पनि नुम् आगमलाई बाधेर नुट् आगम नै हुने भएकोले यौटै रूप भयो ।

**एवमिति**– यसैगरी ज्ञातृ,कर्तृ आदि शब्द पनि जान्नू ।

**एच इगिति**– आदेश गरिने ह्रस्व हरूका मध्येमा एच्का स्थानमा इक् मात्र आदेश होस् ।

प्रद्यो शब्दको नपुंसकलिङ्गमा "ह्स्वो नपुंसके प्रातिपदिकस्य" यस सूत्रले अलोऽन्त्यस्य" लाएर ओकारका स्थानमा ह्रस्व-अ,इ,उ,ऋ,लृ पाएमा "एच इग्घ्रस्वादेशे"ले आदिश्यमान ह्स्वका मध्ये एच्का स्थानमा इक् मात्र होस् भनेकाले इ,उ,ऋ,लृ मात्र पायो, आन्तरतम्याद् ओ को स्थानमा ओष्ठस्थानीय उकार भयो, 'प्रद्यु' शब्द बन्यो ।

**प्रद्यु**– प्रद्यु शब्ददेखि सु आयो, लुक् भयो प्रद्यु सिद्ध भयो ।

**प्रद्युनी**– प्रद्यु शब्ददेखि औ आयो, औका स्थानमा शी, नुम्, 'प्रद्युनी' सिद्ध भयो ।

**प्रद्यूनि**– प्रद्यु शब्ददेखि जस् आयो, जस्का स्थानमा शि, नुम्, उपधादीर्घ भयो, 'प्रद्यूनि' सिद्ध भयो ।

**प्रद्युना**– प्रद्यु शब्ददेखि टा आयो, ना आदेश भयो, 'प्रद्युना' सिद्ध भयो यस्तै प्रकारले आम्बाहेक अजादि विभक्ति पर भएमा "इकोऽचि०"ले नुम् हुन्छ । आम्मा नुम्लाई बाधेर "नुमचिर०"ले नुट् र दीर्घ भएर, 'प्रद्यूनाम्' हुन्छ । अरू विशेष कार्य छैन । हलादि विभक्तिमा पनि विशेष कार्य छैन ।

प्ररि । प्ररिणी । प्ररीणि । प्ररिणा । एकदेशविकृतमनन्यवत् । प्राभ्याम् । प्ररीणाम् ॥ सुनु । सुनुनी । सुनूनि । सुनुनेत्यादि ॥

**इत्यजन्तनपुंसकलिङ्गाः**

---

**ऐकारान्त प्रै शब्द-** प्रकृष्टा रायो यस्मिन्कुले तत्प्ररि-कुलम् । (उत्कृष्ट संपत्ति भएको कुल)

प्रैशब्दको "ह्रस्वो नपुंसके०" यस सूत्रले "अलोऽन्त्यस्य" लाएर ऐकारका स्थानमा ह्रस्व अ,इ,उ,ऋ,लृ पाएमा "एच इक्०"ले इक् मात्र हुने नियम गरेकोले इ,उ,ऋ,लृ पायो, आन्तरतम्याद् ऐकारका स्थानमा इकार भयो, 'प्ररि' शब्द बन्यो ।

**प्ररि**– प्ररि शब्ददेखि सु आयो, सुको "स्वमोर्नपुंसकात्"ले लुक् भयो, 'प्ररि' सिद्ध भयो ।

**प्ररिणी-** प्ररि शब्ददेखि औ आयो औका स्थानमा शी आदेश, नुम्, णत्व भयो, 'प्ररिणी' सिद्ध भयो ।

**प्ररीणि**– प्ररि शब्ददेखि जस् आयो, शि आदेश, सर्वनामस्थानसंज्ञा "इकोऽचि०"ले नुम् उपधादीर्घ, णत्व भयो, 'प्ररीणि' सिद्ध भयो ।

**प्ररिणा**– प्ररि शब्द देखि टा आयो टाका स्थानमा ना आदेश भयो, णत्व भयो, 'प्ररिणा' सिद्ध भयो ।

**प्राभ्याम्**– प्ररि शब्ददेखि भ्याम् आयो, 'प्ररि+भ्याम्' भयो, "एकदेशविकृतमनन्यवत्" यो परिभाषा लाएर रै शब्दको ह्रस्व भएर रि भएको भए पनि रै शब्द नै मानियो र "रायो हलि"ले इकारका स्थानमा आकार भयो, 'प्राभ्याम्' भयो । यसैगरी हलादि विभक्तिमा सर्वत्र "रायो हलि"ले आकारादेश हुन्छ अजादिमा वारि शब्दजस्तै हुन्छ ।

**औकारान्त शब्द सुनौ**– (शोभना नौर्यस्मिन्स्थले= राम्रो डुङ्गा छ जुन ठाउँमा, राम्रो डुङ्गा भएको ठाउँ )

सुनौ शब्दको "ह्रस्वो नपुंसके०"ले ह्रस्व आदेश हुँदा "अलोऽन्त्यस्य" लाएर औकारका स्थानमा ह्रस्व अ,इ,उ,ऋ,लृ पाएमा "एच इक्०"ले इ,उ,ऋ,लृ मात्र हुने नियम भएपछि, आन्तरतम्याद् औकारका स्थानमा उ भयो, 'सुनु'शब्द बन्यो ।

**सुनु**– सुनु शब्ददेखि सु आयो, लुक् भयो, 'सुनु' सिद्ध भयो ।

**सुनुनी**– सुनु शब्ददेखि औ आयो, औका स्थानमा शी, नुम्, 'सुनुनी' सिद्ध भयो ।

**सुनूनी**– सुनु शब्ददेखि जस् आयो, जस्को स्थानमा शि, नुम्, उपधादीर्घ भयो, 'सुनूनि' सिद्ध भयो ।

**सुनुना-** सुनु शब्ददेखि टा आयो, 'सुनु+आ' भयो, यण्, नुम्लाई बाधेर टाका स्थानमा नाआदेश भयो, 'सुनुना' सिद्ध भयो ।

यस्तै प्रकारले सुनु शब्दमा सर्वत्र मधु शब्दका जस्तै रूप हुन्छन् ।

**अजन्तनपुंसकलिङ्ग समाप्त भयो**

---

## अथ हलन्तपुलिङ्गाः

**२५०. हो ढः ८ । २ । ३१ ।**

हस्य ढः स्याज्झलि पदान्ते च । लिट्, लिड् । लिहौ । लिहः । लिड्भ्याम् । लिट्त्सु, लिट्सु ॥

---

### अब हलन्तपुंलिङ्ग आरम्भ गरिन्छ

**हकारान्त शब्द-** लिह् (चाट्नेवाला)

**हो ढ इति-** हकारका स्थानमा ढकार आदेश होस्, झल् पर भएमा र पदान्तमा पनि । लेढीति-(चाट्छ) यो अर्थमा लिह् धातुदेखि क्विप् भयो, सर्वापहारी लोप भयो, लिह् शब्द बन्यो ।

**लिट्/लिड्-** लिह् शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'लिह्+स्' भयो "हल्ङ्याब्भ्यो" ले स् को लोप भयो, लिह् यसलाई "सुप्तिङन्तं पदम्"ले पदसंज्ञा भयो । "हो ढः"ले हकार पदान्त हुनाले हकारका स्थानमा ढकार भयो, "झलां जशोऽन्ते"ले ढकारको जश्त्व भएर डकार भयो, "वाऽवसाने"ले डकारको वैकल्पिक चर्त्व भयो, 'लिट्' चर्त्व नभएका पक्षमा 'लिड्' यी दुई रूप सिद्ध भए ।

**लिहौ-**लिह् शब्ददेखि प्रथमाको द्विवचन औ आयो, 'लिह्+औ' भयो, ह् औमा लाग्यो, लिहौ भयो ।

**लिहः-** लिह् शब्ददेखि जस् आयो, 'लिह्+अस्'- लिहस्, रुत्व, विसर्ग भयो, 'लिहः' । शस् ङसि र ङस्मा 'लिहः' यही रूप हुन्छ ।

**लिहा-** लिह् शब्ददेखि टा आयो, 'लिहा' सिद्ध भयो । **लिड्भ्याम्-** लिह् शब्ददेखि तृतीयाको द्विवचन भ्याम् आयो, 'लिह्+भ्याम्' भयो, "स्वादिष्वसर्वनामस्थाने"ले पदसंज्ञा भयो, पदान्त हुनाले "हो ढः"ले हकारका स्थानमा ढकार भयो, "झलां जशोऽन्ते"ले जश्त्व भयो, 'लिड्भ्याम्' सिद्ध भयो । चतुर्थी र पञ्चमीको द्विवचनमा पनि यही रूप यही प्रक्रियाद्वारा सिद्ध हुन्छ ।

**लिट्त्सु/लिट्सु-** लिह् शब्ददेखि सप्तमीको बहुवचन सुप् आयो, 'लिह्+सु' भयो, हकारको "हो ढः"ले ढत्व भयो, ढकारको "झलां जशोऽन्ते"ले जश्त्व भयो, 'लिड्+सु' भयो, "ड:सि धुट्"ले धुट् आगम भयो, 'लिड्+ध्' सु भयो, "खरि च"ले धकार र डकारको चर्त्व भयो, 'लिट्त्सु' सिद्ध भयो । धुट् नभएको पक्षमा "खरि च"ले डकारको चर्त्व भयो, 'लिट्सु' यी दुई रूप सिद्ध भए ।

**लिह् शब्दका रूप-**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र. | लिट्/लिड् | लिहौ | लिहः |
| द्वि. | लिहम् | लिहौ | लिहः |
| तृ. | लिहा | लिड्भ्याम् | लिड्भिः |
| च. | लिहे | लिड्भ्याम् | लिडभ्यः |
| पं. | लिहः | लिड्भ्याम् | लिडभ्यः |
| ष. | लिहः | लिहोः | लिहाम् |
| स. | लिहि | लिहोः | लिट्त्सु/लिट्सु । |
| सं. | हे लिट्/लिड् ! | हे लिहौ ! | हे लिहः ! |

हलन्त शब्दहरूमा अजादि विभक्ति पर भएमा प्रायः विभक्तिको अच्मा शब्द जोडिन्छ, विशेष कार्य हुँदैन । सकारान्त विभक्तिमा सकारको रुत्व, विसर्ग हुन्छ । हलादि विभक्ति सु, भ्याम्, भिस्, भ्यस् र सुप्मा विशेष साधन प्रक्रिया हुन्छ । यही कुरामा ध्यान दिनुपर्छ ।

**२५१. दादेर्धातोर्घः ८ । २ । ३२ ॥**

झलि पदान्ते चोपदेशे दादेर्धातोर्हस्य घः ॥

**२५२.एकाचो बशो भष् झषन्तस्य स्ध्वोः ८ । २ । ३७ ॥**

धात्ववयवस्यैकाचो झषन्तस्य बशो भष् से ध्वे पदान्ते च । धुक्, धुग् । दुहौ । दुहः । धुग्भ्याम् । धुक्षु ॥

---

**दादेरिति-** उपदेशमा दकार आदिमा हुने धातुका हकारका स्थानमा घकार होस् झल्पर भएमा र पदान्तमा पनि ।

**एकाचइति-** धातुको अवयव जो एकाच् र झषन्त पनि छ त्यसको अवयव बश्का स्थानमा भष् आदेश होस् । दन्त्य सकार पर भएमा, ध्व शब्द पर भएमा र पदान्तमा पनि । दुह् धातुदेखि क्विप् प्रत्यय भयो, सर्वापहारी लोप भयो, दुह् शब्द बन्यो । दुह् (दुहुने व्यक्ति)

**धुक्/धुग्-** दुह् शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'दुह्+स्' भयो, स् को "हल्ङ्याब्भ्यो०"ले लोप भयो । दुह् यहाँ उपदेशमा दकार आदिमा हुने धातु[५०] छ दुह् धातु पदान्त पनि छ र "हो ढः"लाई बाधेर "दादेर्धातोर्घः"ले घकार भयो, 'दुघ्' भयो । दुघ् यो झषन्त एकाच् छ, त्यसको अवयव बश् दकार पनि छ तर दुघ् यो धातुको अवयव छैन, पूरा धातु छ र "एकाचो बशो भष०"ले भष् आदेश पाएन, नपाएमा "व्यपदेशिवदेकस्मिन्" असहाय भएमा मुख्य सहायवान्मा झैं कार्य होस् भनेकोले मुख्यसहायवान् 'गर्दभ्' आदि ठाउँमा 'दभ्' जस्तै यहाँ 'दुघ्' पनि धातुको अवयव मानियो र बश्-दुका दकारका स्थानमा भष्-भ,घ,ढ,ध पायो, यीमध्ये आन्तरतम्याद् दकारका स्थानमा धकार भयो, 'धुघ्' भयो । धुघ्को घकारका स्थानमा "झलां जशोन्ते"ले जश्त्व "वाऽवसाने"ले चर्त्व भयो, 'धुक्' सिद्ध भयो । चर्त्व नभएका पक्षमा 'धुग्' सिद्ध भयो ।

**दुहौ-** दुह् शब्ददेखि औ आयो, 'दुहौ' सिद्ध भयो ।

**दुहः-** दुह् शब्ददेखि जस् आयो, 'दुह्+अस्'-'दुहस्' भयो, रुत्व, विसर्ग भयो, दुहः सिद्ध भयो ।

**धुग्भ्याम्-** दुह् शब्ददेखि भ्याम् आयो, 'दुह्+भ्याम्' भयो, "दादेर्धातोर्घः"ले हकारको घकार भयो, पूर्ववत "व्यपदेशिवदेकस्मिन्" यो परिभाषा लगाएर "एकाचो बशो भष०"ले भषभाव भयो, 'धुघ्भ्याम्' घकारको "झलां जशोन्ते"ले जश्त्व भयो, 'धुग्भ्याम्' सिद्ध भयो ।

**धुक्षु-** दुह् शब्ददेखि सुप् आयो, 'दुह्+सु' भयो, "दादेर्धातोः०"ले हकारको स्थानमा घकार भयो, पूर्ववत् भष्भाव भयो, जश्त्व, चर्त्व भयो, धुक्सु "आदेशप्रत्यययोः"ले षत्व भयो, ककार षकारको संयोगमा क्ष भयो, 'धुक्षु' सिद्ध भयो । दुह् शब्दमा सर्वत्र हलादि विभक्तिमा घत्व र भष् भाव हुन्छ । अजादि विभक्तिमा विशेष कार्य छैन ।

**दुह् शब्दका रूप-**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | धुक्/ग् | दुहौ | दुहः | **द्वि.** | दुहम् | दुहौ | दुहः |
| **तृ.** | दुहा | धुग्भ्याम् | धुग्भिः | **च.** | दुहे | धुग्भ्याम् | धुग्भ्यः |
| **पं.** | दुहः | धुग्भ्याम् | धुग्भ्यः | **ष.** | दुहः | दुहोः | दुहाम् |
| **स.** | दुहि | दुहोः | धुक्षु | **सं.** | हे धुक्/ग् | हे दुहौ ! | हे दुहः ! |

---

५० क्विन्क्विबन्ता विजन्ताश्च विडन्ताश्च तथैव ये । ते धातुत्वं न जहति नामत्वं प्राप्नुवन्ति च ॥

**२५३. वा द्रुहमुहष्णुहष्णिहाम् ८ । २ । ३३ ॥**

एषां हस्य वा घो झलि पदान्ते च । ध्रुक् ध्रुग्, ध्रुट्, ध्रुड् । द्रुहौ । द्रुहः । ध्रुग्भ्याम् । ध्रुड्भ्याम् । ध्रुक्षु, ध्रुट्त्सु, ध्रुट्सु ॥

---

**वा द्रुहेति-** द्रुह् धातु, मुह् धातु ष्णुह् धातु, ष्णिह् धातुको हकारका स्थानमा विकल्पले घकार होस् झल् पर भएमा र पदान्तमा पनि ।

द्रुह् धातुका हकारका स्थानमा "दादेर्धातोर्घः"ले घत्व प्राप्त थियो । मुह् ष्णुह् ष्णिह्का स्थानमा प्राप्त थिएन, अतः यो सूत्र प्राप्ताप्राप्त विभाषा सूत्र हो ।

**ध्रुक / ध्रुग् / ध्रुट् / ध्रुड्-** द्रुह् शब्ददेखि सु आयो, 'द्रुह्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, पदसंज्ञा भयो, द्रुह्का हकारका स्थानमा "हो ढः"लाई बाधेर "दादेर्धातोः०"ले नित्य घत्व पाएमा "वा. द्रुहमुह०"ले वैकल्पिक घत्व भयो, "व्यपदेशिवदेकस्मिन्" लगाएर "एकाचो बशो भष्०"ले भष्भाव भयो, 'ध्रुघ्' भयो, जश्त्व, चर्त्व, 'ध्रुक्' सिद्ध भयो । चर्त्व नभएको पक्षमा 'ध्रुग्' सिद्ध भयो । यी दुई रूप भए । घत्व नभएका पक्षमा "हो ढः"ले ढत्व, "एकाचः०"ले भष्भाव भयो, ध्रुढ् जश्त्व भयो, चर्त्व भयो, 'ध्रुट्' भयो । चर्त्व नभएको पक्षमा 'ध्रुड्' यी दुई रूप भए । यसरी सुमा चार रूप भए ।

**द्रुहौ-** द्रुह शब्ददेखि औ आयो, द्रुहौ भयो ।

**द्रुहः-** द्रुह् शब्ददेखि जस् 'द्रुह+अस्'-'द्रुहस्' भयो, रुत्व, विसर्ग भयो, 'द्रुहः' सिद्ध भयो । यस्तै प्रकारले अजादिविभक्ति पर भएमा हकार लाग्न जान्छ, सकारान्त विभक्तिमा रुत्व, विसर्ग हुन्छ । अरू विशेष कार्य केही छैन ।

**ध्रुग्भ्याम् / ध्रुड्भ्याम्-** द्रुह् शब्ददेखि भ्याम् आयो, पदसंज्ञा भयो "हो ढः"लाई बाधेर "दादेः"ले नित्य घकार पाएको मा बाधेर "वा द्रुह०"ले वैकल्पिक घत्व भयो, जश्त्व भयो, 'ध्रुग्भ्याम्', घत्व नभएको पक्षमा ढत्व, भष्भाव, जश्त्व भयो, 'ध्रुड्भ्याम्' सिद्ध भयो । यसरी दुई रूप भए । यसैगरी भ्याम्, भिस् र भ्यस्मा सर्वत्र यही प्रकारले दुई-दुई रूप हुन्छन् ।

**ध्रुक्षु / ध्रुट्त्सु / ध्रुट्सु-** द्रुह् शब्ददेखि सुप् आयो, 'द्रुह्+सु' भयो । पूर्ववत् बाध्यबाधक भएपछि "वा द्रुह०"ले वैकल्पिक घत्व, भष्भाव, जश्त्व भयो, 'ध्रुक्+सु' "आदेशप्रत्यययोः"ले षत्व भयो, कषसंयोग भएर क्ष भयो, 'ध्रुक्षु' सिद्ध भयो । घत्व नभएको पक्षमा ढत्व भयो, जश्त्व भयो, धुट् आगम भयो, 'ध्रुड्+ध्+सु' "खरि च"ले धकारको र डकारको चर्त्व भयो, 'ध्रुट्त्सु' सिद्ध भयो । धुट् नभएमा डकारको चर्त्व भयो, 'ध्रुट्सु' भयो । यसरी सुप्मा तीन रूप सिद्ध भए ।

**द्रुह शब्दका रूप -**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र. | ध्रुक्-ग् / ध्रुट्-ड् | द्रुहौ | द्रुहः |
| द्वि. | द्रुहम् | द्रुहौ | द्रुहः |
| तृ. | द्रुहा | ध्रुग्भ्याम् / ध्रुड्भ्याम् | ध्रुग्भिः / ध्रुड्भिः |
| च. | द्रुहे | ध्रुग्भ्याम् / ध्रुड्भ्याम् | ध्रुग्भ्यः / ध्रुड्भ्यः |
| पं. | द्रुहः | ध्रुग्भ्याम् / ध्रुड्भ्याम् | ध्रुग्भ्यः / ध्रुड्भ्यः |
| ष. | द्रुहः | द्रुहोः | द्रुहाम् । |
| स. | द्रुहि | द्रुहोः | ध्रुक्षु / ध्रुट्त्सु / ध्रुट्सु |
| सं. | हे. ध्रुक् / ग्, हे ध्रुट् / ड् ! | हे द्रुहौ ! | हे द्रुहः ! |

---

एवं मुक्, मुग् इत्यादि ॥

**२५४.धात्वादेः षः सः ६ । १ । ६४ ॥**

स्नुक्, स्नुग्, स्नुट्, स्नुड् । एवं स्निक्, स्निग्, स्निट्, स्निड् ॥ विश्ववाट्, विश्ववाड्, विश्ववाहौ । विश्ववाहः । विश्वाहम् । विश्ववाहौ ॥

---

**एवं मुगिति**– यस्तै प्रकारले मुह् शब्द पनि जान्नू ।

**मुक्/मुग्/मुट्/मुड्**– मुह् शब्ददेखि सु आयो, 'मुह+स्' भयो, "हल्ङ्याब्भ्यो०"ले सकारको लोप भयो, 'मुह्' भयो, "हो ढः"लाई बाधेर "वा द्रुहमुह०"ले वैकल्पिक घत्व भयो, जश्त्व, चर्त्व, भयो, 'मुक्', चर्त्व नभएमा 'मुग्' भयो, दुई रूप भए । घत्वाभाव पक्षमा हकारको "हो ढः"ले ढत्व भयो, जश्त्व चर्त्व भयो, 'मुट्', चर्त्वाभाव पक्षमा 'मुड्' यसरी दुई रूप गरी जम्मा चार रूप सिद्ध भए । भ्याम्, भिस् र भ्यस्मा द्रुह्का जस्तै घत्वपक्ष र ढत्वपक्षमा गरी दुई दुई रूप हुन्छन् सुप्मा पनि द्रुह्शब्दका जस्तै तीन रूप हुन्छन्, अजादिमा विशेष कार्य छैन ।

**धात्वादेरिति**– धातुका आदिमा रहेका मूर्धन्य षकारका स्थानमा दन्त्य सकार आदेश होस् ।

**ष्णुह** (वमन गर्ने ) ष्णुह् धातुमा ष्णुहका अकारको "उपदेशेऽजनुनासिक०"ले इत्संज्ञा र "तस्य लोपः०"ले लोप भयो ष्णुह् भयो । "धात्वादेः षः सः"ले धातुका आदिमा हुनाले ष्णुह्का षकारको स्थानमा दन्त्य सकार भयो । "निमित्तापाये नैमित्तिकस्याप्यपायः" निमित्तको नाश भएपछि नैमित्तिकको पनि नाश हुन्छ । यो न्याय लगाएर णत्वको निमित्त मूर्धन्य षकार नाश हुँदा णकारको पनि नाश भएर नकार भयो, स्नुह् भयो । 'स्नुह्'धातु देखि 'स्नुह्यति' (वमन गर्छ ।) यसअर्थमा क्विप् प्रत्यय भयो, सर्वापहारिलोप भयो, 'स्नुह्'शब्द बन्यो । यस्तै प्रकारले स्निह् शब्द पनि बन्यो ।

**स्नुक्/स्नुग्/स्नुट्/स्नुड्**– स्नुह् शब्ददेखि सु आयो, 'स्नुह+स्' भयो, "हल्ङ्याब्भ्यो०"ले सकारको लोप भयो "हो ढः"ले हकारको ढत्व पाएमा बाधेर "वा द्रुहमुह०"ले वैकल्पिक घत्व भयो, 'स्नुघ्' जश्त्व, चर्त्व भयो, 'स्नुक्', चर्त्व नभएमा 'स्नुग्', यी दुई रूप भए । घत्वाभाव पक्षमा हकारको ढत्व भयो, जश्त्व, चर्त्व भयो, 'स्नुट्', चर्त्व नभएमा, 'स्नुड्', यसरी पुनः दुई रूप भए । सबै रूप मुह् शब्दमा जस्तै चारवटा हुन्छन् ।

**स्निह्**– (प्रेम गर्ने वाला) 'ष्णिह'धातुका अकारको पूर्ववत् इत्संज्ञा लोप, षकारको सकार, णकारको नकार भएर 'स्निह्'धातुदेखि "क्विप् च"ले क्विप् प्रत्यय भएर 'स्निह्'शब्द बन्दछ ।

**स्निक्/स्निग्/स्निट्/स्निड्**– पूर्ववत् स्नुह् शब्दका जस्तै सुमा यी चार रूप हुन्छन् । अरू सबै विभक्तिमा पनि स्नुह् शब्दका जस्तै रूप हुन्छन् ।

**विश्ववाह्**- (जगत्लाई बोक्ने शेष भगवान्) विश्वं वहति यो अर्थमा 'विश्व+ङस्' पूर्वमा हुने वह् धातुदेखि "वहेश्च"ले ण्वि प्रत्यय भयो, सर्वापहारिलोप भयो, "प्रत्ययलोपे०" लगाएर "अत उपधायाः"ले वृद्धि भयो, समास, विभक्तिको लोप भयो । 'विश्ववाह्' शब्द बन्यो ।

**विश्ववाट्/विश्ववाड्**- विश्ववाह् शब्ददेखि सु आयो, लोप भयो, पदत्वात् "हो ढः"ले हकारको ढत्व भयो, जश्त्व चर्त्व भयो, 'विश्ववाट्' चर्त्व नभएमा 'विश्ववाड्' यसरी दुई रूप सिद्ध भए । विश्ववाहौ, विश्ववाहः, विश्ववाहम्, विश्ववाहौ यी रूपमा केही विशेष कार्य छैन । शसमा-

**२५५.इग्यणः संप्रसारणम्** १ । १ । ४५ ॥

यणः स्थाने प्रयुज्यमानो य इक् स संप्रसारणसंज्ञः स्यात् ॥

**२५६.वाह ऊठ्** ६ । ४ । १३२ ॥

भस्य वाहः संप्रसारणमूठ् ॥

**२५७.संप्रसारणाच्च** ६ । १ । १०८ ॥

संप्रसारणादचि पूर्वरूपमेकादेशः । एत्येधत्यूठ्स्विति वृद्धिः । विश्वौहः, इत्यादि ॥

**२५८.चतुरनडुहोरामुदात्तः** ७ । १ । ९८ ॥

अनयोराम् स्यात्सर्वनामस्थाने परे ॥

**२५९.सावनडुहः** ७ । १ । ८२ ॥

अस्य नुम् स्यात् सौ परे । अनड्वान् ॥

---

**इग्यण इति**– यण्का स्थानमा प्रयोग गरिने जो इक् त्यो संप्रसारणसंज्ञक होस् ।

**वाह इति**– भसंज्ञक वाह्शब्दान्त अङ्गको अवयव वाहशब्दका स्थानमा संप्रसारणसंज्ञक ऊठ् आदेश होस् ।

**संप्रसारणादिति**– संप्रसारणदेखि अच् पर भएमा पूर्व र परका स्थानमा पूर्वरूप एकादेश होस् । "वृद्धिरेचि"ले वृद्धि हुन्छ ।

**विश्वौहः**- विश्ववाह् शब्ददेखि शस् आयो, 'विश्ववाह्+अस्' भयो, 'विश्ववाह'लाई भसंज्ञा भयो, "वाह ऊठ्"ले भसंज्ञक वाह् शब्दमा अङ्गको अवयव वाह्का स्थानमा संसारण संज्ञक ऊठ् आदेश होस् भनेकोले संप्रसारण भनेको के हो ? "इग्यणः संप्रसारणम्"ले 'यण्का स्थानमा प्रयोग गरिने इक्लाई संप्रसारण संज्ञा होस् भन्छ', पहिले वाह्का वकार स्थानमा ऊठ् आदेश नगरेसम्म संप्रसारण संज्ञा नहुने र संप्रसारण संज्ञा नभै ऊठ् नहुने हुँदा दुवै सूत्र अन्योन्याश्रयदोषदूषित भए र "अन्योन्याश्रयाणि शास्त्राणि न प्रथन्ते" यो न्यायअनुसार दुवै सूत्र प्रत्याख्यान गर्नुपर्ने भएकोले पुनः "व्याख्यानतो विशेषप्रतिपत्तिः०" यो न्याय लगाएर "वाह ऊठ्"को व्याख्यान गर्दा "सूत्रशाटिकान्याय" लाग्यो । यसको आशय- जस्तो कि कुनै महाजन जुलाहालाई धागो दिंदै भन्छ 'शाटिकां वय'- (सारी बुन) सारी भैसकेको भए किन बुन्नु ? बुन्ने त धागो हो । अतः अर्थ हुन्छ, पछि सारी हुने तरिकाले धागो बुन, अर्थात् धागो यसरी बुन कि बुनिसक्दा यो धागो सारी होस् । त्यस्तै उक्तसूत्रको 'भविष्यमा संप्रसारणसंज्ञा हुने 'ऊठ्' आदेश होस्,' यो अर्थ भयो । यो अर्थ भएपछि विश्ववाह्को अवयव वाह्का वकार स्थानमा ऊठ् भयो, ठ्कारको इत्संज्ञा लोप भयो, 'विश्व+ऊ+आह+अस्' भयो, ऊकारको "इग्यणः०"ले संप्रसारणसंज्ञा भयो, भएपछि संप्रसारण ऊदेखि 'आह्'को आकार अच् पर हुनाले "संप्रसारणाच्च"ले पूर्वरूप ऊकार एकादेश भयो, 'विश्व+ऊह+अस्' भयो । 'विश्व+ऊह्' यहाँ "एत्येधत्यूठ्सु"ले वृद्धि भयो, वर्णमेलन भयो, 'विश्वौहस्' भयो, रुत्व, विसर्ग भयो, 'विश्वौहः' सिद्ध भयो, ।

**चतुरेति**– चतुर् शब्द र अनडुह् शब्दको उदात्त आम् आगम होस्, सर्वनामस्थान पर भएमा ।

**सावनेति**– अनडुह् शब्दको अम् आगम होस् सु पर भएमा ।

**अनड्वान्**– अनडुह् शब्ददेखि सु आयो, 'अनडुह्+स्' भयो, भएपछि "चतुरनडुहोः०"ले अनडुह्को आम् आगम भयो, मकारको इत्संज्ञा र लोप भयो, "मिदचोऽन्त्यात्परः" लगाएर अनडुका उकारदेखि पर 'आ'भयो, यण् भयो, 'अनड्वाह्+स्' भयो, "सावनडुहः"ले नुम् भयो, अनुबन्धलोप भएपछि "मिदचोऽन्त्यात्परः" लगाएर 'अनड्वा'का आकारदेखि पर न् भयो, 'अनड्वान्+ह्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप, हकारको संयोगान्तलोप भयो, 'अनड्वान्' सिद्ध भयो ।

---

**२६०. अम् संबुद्धौ ७ । १ । ९९ ॥**

हे अनड्वन् । हे अनड्वाहौ । हे अनड्वाहः । अनडुहः । अनडुहा ॥

**२६१. वसुस्रंसुध्वंस्वनडुहां दः ८ । २ ।७२ ॥**

सान्तवस्वन्तस्य स्रंसादेश्च दः स्यात्पदान्ते । अनडुद्भ्यामित्यादि ॥ सान्तेति किम् विद्वान् । पदान्ते किम् स्रस्तम् । ध्वस्तम् ॥

---

**अम्सम्बुद्धाविति-** अनडुह् शब्दको अम् आगम होस् संबुद्धि पर भएमा ।

**हे अनड्वन्-** अनडुह् शब्ददेखि संबोधनको एकवचन सु आयो, 'अनडुह्+सु' भयो, सुलाई संबुद्धिसंज्ञा भएपछि अनुबन्धलोप भयो, "चतुरनडुहोः०"ले आम् आगम पाएकोमा बाधेर "अम् सम्बुद्धौ"ले अम् आगम भयो, म् को इत्संज्ञा लोप भयो, "मिदचो०" लगाएर अनडुका उकारदेखि पर अ भयो, 'अनडु+अ+ह्+स्' भयो, "सावनडुहः"ले नुम् भयो, मकार, उकार दुवैको लोप भएपछि न् बाँकी रह्यो, "मिदचो०"ले अदेखि पर भयो, 'अनडु+अन्+ह्+स्' भयो, यण् भयो, 'अनड्वन्+ह्+स्' भयो, हल्ङ्याब्भ्योले सकारको लोप भयो, हकारको संयोगान्तलोप भयो, 'अनड्वन्' हे शब्दको पूर्वप्रयोग भयो, 'हे अनड्वन्' सिद्ध भयो । यहाँ आम् आगम अम् आगम र नुम् आगमको बाध्य बाधक भाव छैन भन्ने कुरा गुरूका मुखबाट बुझ्नू ।

**अनड्वाहौ-** अनडुह् शब्ददेखि औ आयो, "चतुरनडुहो०"ले अनडुह्को आम् भयो, 'अनडु+आह्+औ' यण् भयो, 'अनड्वाहौ' सिद्ध भयो ।

**अनड्वाहः-** अनडुह् शब्ददेखि जस् आयो, 'अनडुह्+अस्' भयो, "चतुरनडुहोः०"ले आम् भयो, 'अनडु+आह्+अस्,' यण्, 'अनड्वाहस्' भयो, सकारको रुत्व, विसर्ग भयो, 'अनड्वाहः' सिद्ध भयो । एवंरीतले अम् औट्मा अनड्वाहम्, 'अनड्वाहौ' यी दुई रूप पनि सिद्ध हुन्छन् ।

**अनडुहा-** अनडुह् शब्ददेखि टा आयो, लाग्न गयो, 'अनडुहा' सिद्ध भयो ।

**वसुस्रंस्विति-** दन्त्य सकार अन्तमा हुने वसु प्रत्ययान्त शब्दका स्थानमा र स्रंस्धातु, ध्वंस्धातु, अनडुह् शब्दका स्थानमा पनि दकार होस् पदान्तमा ।

**अनडुद्भ्याम्-** अनडुह् शब्ददेखि भ्याम् आयो, 'अनडुह्+भ्याम्' भयो, "स्वादिष्वसर्व०"ले भ्याम्लाई पर राखेर अनडुह् यसलाई पदसंज्ञा भएपछि "वसुस्रंसुध्वंस्वनडुहां दः"ले "अलोऽन्त्यस्य" लाएर अनडुह्का हकारका स्थानमा दकार भयो, 'अनडुद्भ्याम्' सिद्ध भयो । यस्तै प्रकारले हलादि विभक्ति पर भएमा हकारको दत्व हुन्छ । अजादिमा सर्वत्र हकार अच्मा लाग्न जान्छ । सुप्मा दत्व, चर्त्व भएर 'अनडुत्सु' हुन्छ ।

**सान्तेति किमिति-** सान्तेति किम् ? "वसुसंसुध्वंस्वनडुहां०" यस सूत्रमा सान्त यो किन भन्नु ? नभन्ने हो भने "वसुस्रंसु०" सूत्रको वसु प्रत्ययान्त शब्द, संस् धातु, ध्वंस् धातु, अनडुह् शब्दका स्थानमा दत्व होस् पदान्तमा यस्तो अर्थ होला । यो अर्थ भए दोषजाला कहाँ ? विद्वान् यहाँ । यहीं पनि वसु प्रत्ययान्त हुनाले विद्वान्का नकारका स्थानमा दत्व भै जाला । सो नहोस् भनेर सूत्रमा "सान्त" यो पढियो, यो पढेपछि दन्त्य सकार अन्तमा हुने वसु प्रत्ययान्त भन्ने अर्थ भयो, यहाँ दन्त्य सकार अन्तमा हुने वसु प्रत्ययान्त शब्द छैन, नकार अन्तमा हुने वसु प्रत्ययान्त शब्द छ र दत्व भएन 'विद्वान्' यस्तै रह्यो ।

**पदान्ते किमिति-** पदान्ते किम् "वसुस्रंसु०" भन्ने सूत्रमा पदान्ते किन भन्नु ? नभन्ने हो भने सूत्रको दन्त्य सकार अन्त्यमा हुने वसु प्रत्ययान्तशब्द, स्रंस् धातु, ध्वंस् धातु, अनडुह् शब्दका स्थानमा दत्व होस् भन्ने अर्थ होला । यस्तो अर्थ भए दोष जाला, स्रस्तम् ध्वस्तम् यहाँ । यही पनि

**२६२. सहेः साडः सः ८ । ३ । ५६ ॥**

साड्रूपस्य सहेः सस्य मूर्धन्यादेशः । तुराषाट्, तुराषाड् ॥ तुरासाहौ । तुरासाहः । तुराषाड्भ्यामित्यादि ॥

**२६३. दिव औत् ७ । १ । ८४ ॥**

दिविति प्रातिपदिकस्यौत्स्यात् सौ । सुद्यौः । सुदिवौ ॥

**२६४. दिव उत् ६ । १ । १३१ ॥**

दिवोऽन्तादेश उकारः स्यात् पदान्ते । सुद्युभ्यामित्यादि ॥

---

स्रंस् धातु ध्वंस धातु छ र स्रस्, ध्वस्का सकारको दत्व होला । सो नहोस् भनेर हामीले पदान्ते भन्यौं, पदान्ते भनेपछि पदान्तमा भन्ने अर्थ भयो । यहाँ 'स्रस्'को 'ध्वस्'को सकार पदान्त छैन र दत्व भएन 'स्रस्तम्', 'ध्वस्तम्' यस्तै रह्यो । स्रस्तम्, ध्वस्तम् (खसेको)

**सहेरिति** साड् रूप हुने सह् धातुका दन्त्य सकारका स्थानमा मूर्धस्थानी आदेश होस् ।

**तुराषाट्, तुराषाड्** (इन्द्र) तुरासाह् शब्ददेखि सु आयो, 'तुरासाह्+स्' भयो, सकारको "हल्ङ्याभ्यो०"ले लोप भयो । पदसंज्ञा भएपछि हकारको "हो ढः"ले ढत्व भयो; जश्त्व भयो, 'तुरासाड्' भयो, यहाँ साड् रूपमा हुने सह् धातु छ, साड्का सकारका स्थानमा मूर्धस्थानी ऋ,टु,र,ष जम्मै पायो, "स्थानेऽन्तरतमः" लगाएर स्थानीबाट नियम नहुँदा अर्थमा जानु पर्‍यो । सकारको मात्र अर्थ नहुँदा नियम भएन । अब गुणमा जाँदा पहिले आभ्यन्तर प्रयत्नमा स्थानी सकारको ईषद्विवृतप्रयत्न छ, आदेश ऋ,टु,र,षमा ईषद्विवृत प्रयत्न भएको षकार छ र सकारका स्थानमा षकार भयो, 'तुराषाड्' चर्त्व भयो, 'तुराषाट्' चर्त्व नभएका पक्षमा 'तुराषाड्', यी दुई रूप भए ।

**तुरासाहौ-** तुरासाह् शब्ददेखि औ आयो, 'तुरासाह्+औ' यहाँ तुरासाह् पद नहुनाले दन्त्य सकारको षकार र हकारको ढत्व भएन । हकार औमा लाग्न गयो, 'तुरासाहौ' भयो ।

**तुरासाहः** तुरासाह् शब्ददेखि जस् 'तुरासाह्+अस्' भयो, लाग्न गयो, रुत्व, विसर्ग भयो, 'तुरासाहः' सिद्ध भयो ।

**तुराषाड्भ्याम्-** तुरासाह् शब्ददेखि भ्याम् 'तुरासाह्+भ्याम्' पदसंज्ञा ढत्व जश्त्व भयो, "सहे साडः०"ले षत्व भयो, 'तुराषाड्भ्याम्' सिद्ध भयो । अन्यत्र पनि हलादि विभक्तिमा ढत्व जश्त्व षत्व हुन्छ । सुप्मा धुट् आगम पनि हुन्छ । धुट् भएका पक्षमा 'तुराषाट्त्सु' नभएका पक्षमा 'तुराषाट्सु' हुन्छ । यहाँ "न पदान्तात्०"ले ष्टुत्व निषेध पनि हुन्छ ।

**वकारान्त शब्द-** सुदिव् (राम्रो आकाश)

**दिव इति-** दिव् यो प्रातिपदिकको अन्त्य अल्का स्थानमा औकार आदेश होस् सु पर भएमा ।

सुदिव् (राम्रो आकाश) **सुद्यौः**-सुदिव् शब्ददेखि सु आयो, 'सुदिव्+स्' भयो, सु पर भएकोले "दिव औत्"ले वकारका स्थानमा औकार भयो, यण् भयो, 'सुद्यौस्' भयो, रुत्व विसर्ग भयो, 'सुद्यौः' सिद्ध भयो ।

**सुदिवौ** सुदिव् शब्ददेखि औ आयो, वकार औमा लाग्यो, सुदिवौ सिद्ध भयो ।

यस्तै प्रकारले अजादि विभक्तिका अच्मा वकार लाग्छ । विशेष कार्य केही छैन ।

**दिव उदिति-** दिव् शब्दका अन्त्य अल्का स्थानमा उकार आदेश होस् पदान्तमा ।

**सुद्युभ्याम्-** सुदिव् शब्ददेखि तृतीयाको द्विवचन भ्याम् आयो, 'सुदिव्+भ्याम्' भयो, भ्याम्लाई पर राखेर सुदिव्लाई पदसंज्ञा भयो, "दिव उत्"ले 'सुदिव्' यो पद हुनाले पदान्त वकारका स्थानमा उकार भयो, यण् भयो, 'सुद्युभ्याम्' सिद्ध भयो ।

चत्वारः । चतुरः । चतुर्भिः । चतुर्भ्यः ॥

**२६५. षट्चतुर्भ्यश्च ७ । १ । ५५ ॥**

एभ्य आमो नुडागमः ॥

**२६६.रषाभ्यां नो णः समानपदे ८ । ४ । १ ॥**

(**सू.नं. ६० "अचो रहाभ्यां द्वे"** । अचः पराभ्यां रेफहकाराभ्यां परस्य यरो द्वे वा स्तः)।
चतुर्ण्णाम्, चतुर्णाम् ॥

---

यसैगरी सबै हलादि विभक्तिमा वकारका स्थानमा उकार हुन्छ । सुप्मा "आदेशप्रत्यययोः"ले षत्व हुन्छ र 'सुद्युषु' हुन्छ ।

**सुदिव् शब्दका रूप-**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | सुद्यौः | सुदिवौ | सुदिवः | **द्वि.** | सुदिवम् | सुदिवौ | सुदिवः |
| **तृ.** | सुदिवा | सुद्युभ्याम् | सुद्युभिः | **च.** | सुदिवे | सुद्युभ्याम् | सुद्युभ्यः |
| **प.** | सुदिवः | सुद्युभ्याम् | सुद्युभ्यः | **ष.** | सुदिवः | सुदिवोः | सुदिवाम् |
| **स.** | सुदिवि | सुदिवोः | सुद्युषु | **सं.** | हे सुद्यौः ! | हे सुदिवौ ! | हे सुदिवः ! |

**रान्त शब्द-** चतुर् (चार) । चतुर् शब्द नित्य बहुवचनान्त छ ।

**चत्वारः-** चतुर् शब्ददेखि जस् आयो, 'चतुर्+अस्', भयो, "चतुरनडुहोरामुदात्तः"ले सर्वनामस्थान अस् पर भएको हुनाले आम् आगम भयो, मकारको इत्संज्ञा, लोप भयो, 'आ' भयो, । "मिदचोऽन्त्यात्परः" लगाएर 'आ'यो 'चतु'का उकारदेखि पर भयो, यण् भयो, 'चत्वार्+अस्'- 'चत्वारस्' भयो, रुत्व, विसर्ग भयो, 'चत्वारः' सिद्ध भयो ।

**चतुरः-** चतुर् शब्ददेखि शस् आयो, 'चतुर्+अस्' भयो, रेफ अकारमा लाग्न गयो, चतुरस् भयो, सकारको रुत्व, विसर्ग भयो, 'चतुरः' सिद्ध भयो ।

**चतुर्भिः** चतुर् शब्ददेखि भिस् आयो, 'चतुर्+भिस्' जलतुम्बिकान्यायले रेफको ऊर्ध्वगमन, रुत्व, विसर्ग भयो, 'चतुर्भिः' सिद्ध भयो ।

**चतुर्भ्यः-** चतुर् शब्ददेखि चतुर्थीको बहुवचन भ्यस् आयो, रेफको ऊर्ध्वगमन सकारको रुत्व विसर्ग भयो, 'चतुर्भ्यः' सिद्ध भयो । पञ्चमीको बहुवचनमा पनि यसैगरी 'चतुर्भ्यः' हुन्छ ।

**षट्चतुर्भ्यश्चेति-** षट्संज्ञक शब्द र चतुर् शब्ददेखि पर रहेका आम्को नुट् आगम होस् ।

**रषाभ्यामिति-** रेफ र मूर्धन्य षकारदेखि पर रहेका नकारका स्थानमा णकार होस्, निमित्त र नैमित्तिक अखण्डपदमा भए छँदामा । "अचो रहाभ्यां द्वे" ले णकारको द्वित्व हुन्छ ।

**चतुर्ण्णाम्/चतुर्णाम्-** चतुर् शब्ददेखि षष्ठीको बहुवचन आम् आयो, 'चतुर्+आम्' भयो, "षट्चतुर्भ्यश्च"ले आम्को नुट् आगम भयो, 'चतुर्न्+आम्' भयो, "रषाभ्यां नो णः समानपदे"ले णत्व भयो, 'चतुर्ण्+आम्' भयो । यहाँ अच्देखि पर रहेको रेफदेखि, पर रहेको यर् ण् हुनाले "अचो रहाभ्यां द्वे"ले त्यसको द्वित्व भयो, 'चतुर्ण्णाम्' द्वित्व नभएको पक्षमा 'चतुर्णाम्' यी दुई रूप सिद्ध भए ।

**२६७. रोः सुपि ८ । ३ । १६ ॥**

रोरेव विसर्गः सुपि । षत्वम् । षस्य द्वित्वे प्राप्ते ॥

**२६८. शरोऽचि ८ । ४ । ४९ ॥**

अचि परे शरो न द्वे स्तः । चतुर्षु ॥

**२६९. मो नो धातोः ८ । २ । ६४ ॥**

धातोर्मस्य नः पदान्ते । प्रशान् ॥

**२७०. किमः कः ७ । २ । १०३ ॥**

किमः कः स्याद्विभक्तौ । कः । कौ । के इत्यादि ।

---

**रोःसुपीति**– सप्तमीको बहुवचन सुप् पर भएमा यदि विसर्ग हुन्छ भने उकारानुबन्ध रेफका स्थानमा मात्र विसर्ग होस् अन्यत्र नहोस् । यो सूत्र "खरवसानयोः०"को नियामक हो ।

**षत्वमित्यादि**-सुप्मा सुका सकारको षत्व हुन्छ, षकारको द्वित्व पाएमा–

**शर इति**– शर्‌को अच् पर भएमा द्वित्व नहोस् ।

**चतुर्षु** चतुर् शब्ददेखि सप्तमीको बहुवचन सुप आयो, 'चतुर्+सु' भयो, भएपछि चतुर्‌को रेफका स्थानमा "खरवसानयोः०"ले विसर्ग पायो, पाएमा "रोः सुपि"ले 'सप्तमीको बहुवचन सुप् पर भएमा यदि विसर्ग हुन्छ भने उकारानुबन्ध रेफका स्थानमा मात्र होस् अन्यत्र नहोस्' भनेकोले यहाँ चतुर्‌को रेफ उकारानुबन्ध नभएकोले विसर्ग भएन । "आदेश प्रत्यययोः"ले इण् रेफदेखि पर रहेको सुका सकारका स्थानमा मूर्धन्य षकार भयो, षकारको "अचो रहाभ्यां"ले द्वित्व पाएकोमा "शरोऽचि"ले द्वित्व निषेध भयो, 'चतुर्षु' सिद्ध भयो ।

**मकारान्त शब्द–**

**मोन इति**– धातुका मकारका स्थानमा नकार होस् पदान्तमा ।

प्रशाम् (ज्यादै शान्त) **प्रशान्**– प्रशाम् शब्ददेखि सु आयो, 'प्रशाम्+स्' भयो, "हल्ङ्याब्भ्यो०"ले सुलोप भयो, "प्रत्ययलोपे प्रत्ययलक्षणम्" लगाएर पदसंज्ञा भयो, "मो नो धातोः"ले मकारको स्थानमा नकार भयो, प्रशान् "नलोपः प्रातिपदिकान्तस्य"ले नकारको लोप पायो, पाएमा "पूर्वत्रासिद्धम्"ले नत्व असिद्ध गरेकोले 'प्रशाम्' यस्तो देख्यो र नकारको लोप भएन, 'प्रशान्' सिद्ध भयो ।

औ जस् आदि अजादि विभक्तिमा 'प्रशामौ', 'प्रशामः' आदि रूप हुन्छन् । भ्याम्, भिस् आदि हलादि विभक्तिमा नत्व भएर, 'प्रशान्भ्याम्', 'प्रशान्भिः' आदि रूप हुन्छन् । सुप्मा 'प्रशान्+सु' भएपछि "नश्च"ले धुट् आगम भएका पक्षमा 'प्रशान्त्सु' नभएका पक्षमा 'प्रशान्सु' दुई रूप हुन्छन् । यहाँ "मो नो धातोः"ले गरेको नत्व असिद्ध भएर धुट् आगम हुन्न भन्नु भूल हो । किनभने यी दुवै सूत्र त्रिपादी हुन् । नश्च ८।३।३० छ "मो नो धातोः" ८।२।४६। छ त्रिपादीमा परका दृष्टिमा पूर्व असिद्ध हुन्न । अर्थात् "नश्च"का दृष्टिमा "मोनो धातोः" असिद्ध हुन्न, सिद्धै हुन्छ । (पूर्व प्रति परमसिद्धं न तु परं प्रति पूर्वम्)

**किम इति**– किम् शब्दका स्थानमा क आदेश होस् विभक्ति पर भएमा ।

**कः**– (को) किम् शब्ददेखि सु आयो, 'किम्+सु' भयो, विभक्ति पर हुनाले "किमः कः"ले किम्‌का स्थानमा क आदेश भयो, 'कस्' भयो, रुत्व, विसर्ग भयो, 'कः' सिद्ध भयो ।

**कौ**– किम् शब्ददेखि औ 'किम्+औ' भयो "किमः कः"ले किम्‌का स्थानमा क आदेश भयो 'क+औ' भयो, 'क+औ' यहाँ "वृद्धिरेचि"लाई बाधेर "प्रथमयोः०"ले पूर्वसवर्ण दीर्घ पाएकोमा "नादिचि" ले निषेध भएपछि "बाधकाभावे०" लगाएर वृद्धि भयो, 'कौ' सिद्ध भयो ।

शेषं सर्ववत् ॥

२७१. **इदमो मः** ७ । २ । १०८ ॥

सौ । त्यदाद्यत्वापवादः ॥

२७२. **इदोऽय् पुंसि** ७ । २ । १११ ॥

इदम इदोऽय् सौ पुंसि । अयम् । त्यदाद्यत्वे ॥

२७३. **अतो गुणे** ६ । १ । ९७ ॥

अपदान्तादतो गुणे पररूपमेकादेशः ॥

२७४. **दश्च** ७ । २ । १०९ ॥

इदमो दस्य मः स्याद्विभक्तौ । इमौ ।

---

**के-** किम् शब्ददेखि जस् आयो, 'किम्+अस्' भयो, "किमः कः"ले कआदेश भयो, 'क+अस्' भयो, स्थानिवद्भाव भएर क पनि अकारान्त सर्वनाम नै हुनाले "जसः शी"ले अस्‌का स्थानमा 'शी' आदेश भयो । 'क+ई' यहाँ गुणलाई बाधेर पाएको पूर्वसवर्णदीर्घलाई "नादिचि"ले निषेध गरेपछि गुण भयो, 'के' सिद्ध भयो । "किमः कः"ले क आदेश गरेपछि स्थानिवद्भाव भएर किम्‌का स्थानमा आदेश भएको 'क' शब्द अकारान्त सर्वनाम हुन्छ र स्मै, स्मात्, स्मिन्, आदेश र सुट् आगम यी प्रक्रिया हुन्छन् ।

**शेषमिति-** बाँकी सबै रूप सर्व शब्दका जस्तै हुन्छन् ।

**किंशब्दका रूप-**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | कः | कौ | के | **द्वि.** | कम् | कौ | कान् |
| **तृ.** | केन | काभ्याम् | कैः | **च.** | कस्मै | काभ्याम् | केभ्यः |
| **प.** | कस्मात्/द् | काभ्याम् | केभ्यः | **ष.** | कस्य | कयोः | केषाम् |
| **स.** | कस्मिन् | कयोः | केषु | | *(त्यदादि शब्दको संम्बोधन हुँदैन ।)* | | |

**इदम इति-** इदम् शब्दका मकारका स्थानमा मकार आदेश होस् सु पर भएमा । "त्यदादीनामः" यो सूत्रको अपवाद हो ।

**इदोऽयिति-** इदम् शब्दका 'इद्'भागका स्थानमा अय् आदेश होस् सु पर भएमा पुंलिङ्गमा ।

**अयम्-** इदम् शब्ददेखि सु आयो, 'इदम्+स्' भयो, "त्यदादीनामः"ले अत्व पायो, त्यसलाई बाधेर "इदमो मः"ले इदम्‌का मकारका स्थानमा मकार नै भयो, "इदोऽय् पुंसि"ले इदम् शब्दको 'इद्' भागका स्थानमा अय् आदेश भयो, 'अयम्+स्' भयो, "हलङ्याब्भ्यो०"ले सकारको लोप भयो, 'अयम्' सिद्ध भयो । इदम् शब्दको प्रथमाको द्विवचनमा "त्यदादीनामः"ले अत्व भएपछि ।

**अत इति-** पदका अन्तमा नरहेको अकारदेखि गुण पर भएमा पूर्व र परका स्थानमा पररूप एकादेश होस् ।

**दश्चेति-** इदम् शब्दका दकारका स्थानमा मकार आदेश होस् विभक्ति पर भएमा ।

**इमौ-** इदम् शब्ददेखि प्रथमाको द्विवचन औ आयो, 'इदम्+औ' भयो, "त्यदादीनामः"ले इदम्‌का मकारका स्थानमा अकार भयो, 'इद+अ+औ'भयो, 'इद+अ' यहाँ "अकः सवर्णे०"ले दीर्घ पायो, त्यसलाई बाधेर "अतो गुणे"ले अपदान्त ह्रस्व इदको अकारदेखि गुण अकार पर भएकोले दुवै अकारका स्थानमा पररूप एकादेश अ भयो, 'इद+औ' "दश्च"ले इदका दकारको मकार

इमे । त्यदादेः सम्बोधनं नास्तीत्युत्सर्गः ॥

**२७५. अनाप्यकः ७ । २ । ११२ ॥**

अककारस्येदम इदोऽनापि विभक्तौ । आबिति प्रत्याहारः । अनेन ॥

**२७६. हलि लोपः ७ । २ । ११३ ॥**

अककारस्येदम इदो लोप आपि हलादौ । नानर्थकेऽलोन्त्यविधिरनभ्यासविकारे ॥

**२७७. आद्यन्तवदेकस्मिन् १ । १ । २१ ॥**

एकस्मिन्क्रियमाणं कार्यमादाविवान्त इव स्यात् । सुपि चेति दीर्घः । आभ्याम् ॥

---

भयो, 'इम+औ' भयो, यहाँ "वृद्धिरेचि"लाई बाधेर पूर्वसवर्णदीर्घ पाएकोमा "नादिचि"ले निषेध भयो, "बाधकाभावे०" लगाएर "वृद्धिरेचि"ले वृद्धि भयो, 'इमौ' सिद्ध भयो ।

**इमे**– इदम् शब्ददेखि जस् आयो, 'इदम्+अस्' भयो इदम्का मकारको "त्यदादीनामः"ले अत्व भयो, "अतो गुणे"ले पररूप भयो 'इद+अस्' भयो "जसः शी"ले जस्का स्थानमा शी आदेश भयो, 'इद+ई' भयो, "दश्च"ले मत्व भयो, 'इम+ई' भयो, "आद्गुणः"लाई बाधेर "प्रथमयोः०"ले पूर्वसवर्णदीर्घ पाएकोमा "नादिचि"ले निषेध भयो, "बाधकाभावे०" लगाएर "आद्गुणः"ले गुण भयो, 'इमे' सिद्ध भयो ।

**त्यदादेरिति**– त्यदादि शब्दको सम्बोधन हुँदैन । यो सम्भव नै छैन । ए यो ? ऐ त्यो ? यसरी संबोधन गर्न मिल्दैन ।

इदम् शब्दको अम् औट् शस्मा इमम्, इमौ, इमान् यी रूप हुन्छन् । यहाँ "त्यदादीनामः," "अतो गुणे", "दश्च", यी तीन सूत्र विशेष छन् । अरू सबै प्रक्रिया सर्व शब्द अथवा राम शब्दको अम् औट् शस्मा जस्तै हुन्छ ।

**अनापीति**– ककारले रहित भएका इदम् शब्दका इद् भागका स्थानमा अन्आदेश होस्, आप् विभक्ति पर भएमा । आप् यो प्रत्याहार हो, यो प्रत्याहार टाको आदेखि लिएर सुप्को पकारसम्म अर्थात् तृतीयादेखि सप्तमीसम्मका विभक्तिको संज्ञा हो ।

**अनेन**– इदम् शब्ददेखि टा आयो, 'इदम्+आ' भयो, "त्यदादीनामः"ले मकारका स्थानमा अकार, अतो गुणेले पररूप भयो, 'इद+आ' भयो । "टाङसिङसामिनात्स्याः"ले टाका स्थानमा इन भयो, 'इद+इन' भयो, "दश्चले" मत्व पायो, त्यसलाई बाधेर "अनाप्यकः"ले इद् भागका स्थानमा अन् भयो, 'अन+इन' भयो, "आद् गुणः"ले गुण भयो, 'अनेन' सिद्ध भयो ।

**हलीति**– ककारले रहित भएका इदम् शब्दका इद् भागको लोप होस् हल् आदिमा हुने आप् विभक्ति पर भएमा-

**(प.) नानर्थक इति**– अभ्यासविकारको स्थानीदेखि भिन्न अनर्थकमा "अलोऽन्त्यस्य" यो परिभाषा सूत्र लाग्दैन ।

**आद्यन्तवदिति**– यौटैमा अर्थात् सहाय नभएकाको ठाउँमा गरिने कार्य आदिमा झैं र अन्तमा झैं होस् । यो सूत्र लगाएर "सुपि च"ले दीर्घ हुन्छ ।

**आभ्याम्**– इदम् शब्ददेखि भ्याम् आयो, 'इदम्+भ्याम्' भयो "त्यदादीनामः"ले अत्व भयो, "अतो गुणे"ले पररूप भयो, 'इद+भ्याम्' भयो, "अनाप्यकः"ले इदम्का इद् भागका स्थानमा अन् पायो, त्यसलाई बाधेर "हलि लोपः"ले ककारले रहित इदम्शब्द भएकोले हलादि आप् विभक्ति भ्याम् पर छ र इद् भागको लोप गर्दा "अलोऽन्त्यस्य" लाएर दकारको मात्र लोप पाएमा "नानार्थके०"ले अभ्यासविकारको स्थानीदेखि भिन्न अनर्थकमा "अलोऽन्त्यस्य" भन्ने परिभाषा

**२७८. नेदमदसोरकोः ७ । १ । ११ ॥**

अककारयोरिदमदसोर्भिस ऐस् न । एभिः । अस्मै । एभ्यः । अस्मात् । अस्य ।

---

सूत्र लाग्दैन भनेर निषेध गरेकोले इद् जम्मैको लोप भयो । 'अ+भ्याम्' भयो, ह्रस्व अकारान्त अङ्ग नभएर ह्रस्व अकार मात्र भएकोले "सुपि च"ले दीर्घ पाएन र "आद्यन्तवदेकस्मिन्" लगाएर असहाय एक 'अ' यसका स्थानमा गरिने दीर्घ कार्य, आदि झैं र अन्तझैं यौटामा पनि होस्, भनेकोले "देवदत्तस्यैकः पुत्रः स एव ज्येष्ठः स एव कनिष्ठः" देवदत्तको यौटा छोरो छ उही जेठो उही कान्छो भने झैं 'अ+भ्याम्' यहाँ अकार मात्र भएपनि अकारान्त अङ्ग मानियो र अकारको "सुपि च"ले दीर्घ भयो, 'आभ्याम्' सिद्ध भयो ।

**नेदमिति**– ककारले रहित भएका इदम् शब्द र अदस् शब्ददेखि पर रहेका भिस्का स्थानमा ऐस् नहोस् ।

**एभिः**- इदम् शब्ददेखि भिस् आयो, 'इदम्+भिस्' भयो, "त्यदादीनामः"ले अत्व, "अतो गुणे"ले पररूप भयो, इद भिस् भयो, "अतो भिस०"ले ऐस् पायो, बाधेर "अनाप्यकः"ले अन् पाएकोमा त्यसलाई बाधेर "हलि लोपः"ले पूर्ववत् इद भागको लोप भयो 'अ+भिस्' भयो, पूर्ववत् "आद्यन्तवदेकस्मिन्" लाएर "अतो भिस ऐस्"ले ऐस् पाएकोमा "नेदमदसोरकोः"ले निषेध भयो, "सुपि च"लाई बाधेर "बहुवचने झल्येत्"ले एत्व भयो, रुत्व, विसर्ग भयो, 'एभिः' सिद्ध भयो ।

**अस्मै**– इदम् शब्ददेखि ङे आयो, "त्यदादीनामः"ले अत्व "अतो गुणे"ले पररूप भयो, 'इद+ए' भयो, 'इद+ए' यहाँ "सर्वनाम्नः स्मै"ले एका स्थानमा स्मै र "अनाप्यक"ले इद्भागका स्थानमा अन् पनि पायो, परत्वात् स्मैलाई बाधेर अन् पायो, पाएमा "कृताकृतप्रसङ्गी विधिर्नित्यः अन्योऽनित्यः" गरेपछि पाउने नगर्दै पनि पाउने विधि नित्य हो, अर्को अनित्य हो । यो परिभाषा अनुसार, यहाँ अन् आदेश गरेपछि पनि नगर्दै पनि स्मै आदेश पाउँछ र त्यो नित्य भयो । तर स्मै आदेश गरेपछि अन् आदेश पाउँदैन, "हलि लोपः"ले बाधि हाल्छ र अन् आदेश अनित्य भयो, । अब "नित्यानित्ययोर्मध्ये नित्यविधिर्बलीयान्", नित्य र अनित्यमा नित्य नै बलवान् हुन्छ भनेकोले स्मै आदेश बलवान् भयो र अन् आदेशलाई बाधेर स्मै आदेश भयो, 'इद+स्मै' भयो, "हलि लोपः"ले इद् भागको लोप भयो, 'अस्मै' सिद्ध भयो ।

**आभ्याम्**– इदम् शब्ददेखि चतुर्थीको द्विवचन भ्याम् आयो, 'इद+भ्याम्' भयो । यहाँ पनि तृतीयाको द्विवचनमा जस्तै प्रक्रिया भएर, 'आभ्याम्' सिद्ध भयो ।

**एभ्यः**- इदम् शब्ददेखि भ्यस् आयो, अत्व पररूप भयो, 'इद+भ्यस्' भयो, "अनाप्यकः"लाई बाधेर "हलि लोपः"ले इद्भागको लोप भयो, 'अ+भ्यस्' भयो, "आद्यन्तवदेकस्मिन्" लगाएर "बहुवचने झल्येत्"ले एत्व भयो, 'एभ्यस्' रुत्व, विसर्ग भयो, 'एभ्यः' सिद्ध भयो ।

**अस्मात्**– इदम् शब्ददेखि ङसि आयो, अत्व पररूप भएपछि 'इद+अस्' भयो । 'इद+अस्' यहाँ अस्का स्थानमा स्मात्आदेश र इदका इद्भागका स्थानमा अन्आदेश दुवै पाएकोमा पूर्ववत् "कृताकृतप्रसङ्गी०" इत्यादि परिभाषा लगाएर स्मात्आदेश भयो, "हलि लोपः"ले इद्भागको लोप भयो, 'अस्मात्' जश्त्व भयो, "वाऽवसाने"ले विकल्पले चर्त्व भयो, 'अस्मात्', चर्त्व नभएका पक्षमा 'अस्माद्' यी दुई रूप सिद्ध भए ।

**अस्य**- इदम् शब्ददेखि ङस् आयो, अत्व पररूप भयो, 'इद+अस्' भयो । 'इद+अस्' यहाँ "टाङसिङसां०"ले स्यआदेश र "अनाप्यकः"ले अन् आदेश दुवै पाएकोमा परत्वात् अन् पायो, पूर्ववत् "कृताकृतप्रसङ्गी०" इत्यादि परिभाषा लगाएर नित्यत्वात् 'स्य' आदेश भयो, 'इद+स्य' भएपछि अन्लाई बाधेर इद् भागको लोप भयो, 'अस्य' सिद्ध भयो ।

अनयोः । एषाम् । अस्मिन् । अनयोः । एषु ॥

**२७९. द्वितीयाटौस्स्वेनः** २ । ४ । ३४ ॥

इदमेतदोरन्वादेशे । किञ्चित्कार्यं विधातुमुपात्तस्य कार्यान्तरं विधातुं पुनरुपादानमन्वादेशः । यथा-अनेन व्याकरणमधीतमेनं छन्दोऽध्यापयेति ।

---

**अनयोः** इदम् शब्ददेखि षष्ठीको द्विवचन ओस् आयो, अत्व पररूप भयो, 'इद+ओस्' भयो "अनाप्यकः"ले अन्आदेश भयो, "ओसि च"ले एकार भयो, 'अने+ओस्'भयो, अय् आदेश भयो, रुत्व, विसर्ग भयो, 'अनयोः' सिद्ध भयो । सप्तमीको द्विवचनमा पनि यही प्रक्रिया हुन्छ ।

**एषाम्**– इदम् शब्ददेखि आम् आयो, अत्व, पररूप भयो, 'इद+आम्' भयो । यहाँ पनि अन् आदेश र सुट् दुवै पाएकोमा पूर्ववत् परिभाषा लाएर नित्यत्वात् सुट् आगम भयो, 'इद+साम्' भयो, इद् भागको लोप भयो, 'अ+साम्' भयो, "आद्यन्तवदेकस्मिन्" लगाएर "बहुवचने०"ले एत्व भयो, "आदेशप्रत्यययोः"ले षत्व भयो, 'एषाम्' सिद्ध भयो ।

**अस्मिन्**– इदम् शब्ददेखि सप्तमीको एकवचन ङि आयो, अत्व पररूप 'इद+इ' भयो, यहाँ पनि नित्यत्वात् "अनाप्यकः"लाई बाधेर "ङसिङ्योःस्मात्स्मिनौ"ले स्मिन्आदेश भयो, इद् भागको लोप भयो, 'अस्मिन्' सिद्ध भयो ।

**एषु**– इदम् शब्ददेखि सुप् आयो अत्व, पररूप भयो, 'इद+सु' "हलि लोपः"ले इद्भागको लोप 'अ+सु' "आद्यन्तवदेकस्मिन्" लगाएर "बहुवचने०"ले एत्व भएपछि षत्व भयो, 'एषु' सिद्ध भयो । इदम् शब्दमा "अनाप्यकः" यो सूत्र टा र ओस्मा मात्र लाग्दछ । अरू ठाउँमा "हलि लोपः" ले बाध्दछ ।

**इदम् शब्दका रूप**–

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | अयम् | इमौ | इमे | **द्वि.** | इमम् | इमौ | इमान् |
| **तृ.** | अनेन | आभ्याम् | एभिः | **च.** | अस्मै | आभ्याम् | एभ्यः |
| **प.** | अस्मात्-द् | आभ्याम् | एभ्यः | **ष.** | अस्य | अनयोः | एषाम् |
| **स.** | अस्मिन् | अनयोः | एषु । | | *(इदम् शब्द त्यदादि हुनाले सम्बोधन हुदैन ।)* | | |

**द्वितीयेति**– द्वितीयाविभक्ति, टा, ओस् पर भएमा इदम् शब्द र एतद् शब्दका स्थानमा एन आदेश होस् अन्वादेश अर्थ बुझिँदामा ।

**किञ्चिदिति**- केही कार्य गर्न पहिले भनिएकाको फेरि अर्को कार्य गर्नका निमित्त ग्रहण गर्नु (भन्नु)लाई अन्वादेश भनिन्छ । तात्पर्य यो हो कि- केही कार्यको निमित्त कसैको चर्चा गरिसकिएको छ । त्यसै व्यक्तिलाई अन्यकार्यका निमित्त केही भन्नुलाई अन्वादेश भनिन्छ । अन्वादेश अर्थमा प्रयोग गरिने इदम् शब्दका स्थानमा उक्त विभिक्त पर भएमा मात्र एन आदेश हुन्छ । अन्वादेश अर्थ बुझिए पनि अरू विभक्ति पर भएमा एन आदेश हुँदैन । यसको उदाहरण वृत्तिकारले दिनुभएको छ ।

**यथेति**- जस्तै 'अनेन व्याकरणमधीतम्, एनं छन्दोऽध्यापय', 'यसले व्याकरण शास्त्र पढेको छ, यसलाई वेद पढाउनुहोस्' । यहाँ कुनै व्यक्तिले आफ्नो छोरालाई अध्यापकको समीपमा उपस्थित गराएर भन्दछ कि 'यसले व्याकरण पढेको छ । यसलाई वेद पढाउनुहोस् ।' यी दुई वाक्यमध्ये पहिलो वाक्यमा व्याकरण पढेको भन्ने कुरा बताउँदा 'अनेन' यहाँ इदम् शब्दको टाको

अनयोः पवित्रं कुलमेनयोः प्रभूतं स्वमिति ॥ एनम् । एनौ । एनान् । एनेन । एनयोः । एनयोः ॥राजा ॥

**२८०. न ङिसम्बुद्ध्योः ८ । २ । ८ ॥**

नस्य लोपो न ङौ सम्बुद्धौ च । हे राजन् ।

---

रूप प्रयोग गरियो, दोस्रो वाक्यमा 'यसलाई वेद पढाउनु होस्' भन्दा इदम् शब्दको अन्वादेश अर्थ बुझिएकोले द्वितीया विभक्ति पर भएमा इदम्का स्थानमा एन आदेश भएर 'एनम्' यस्तो प्रयोग गरियो । अन्वादेश नबुझिएको भए 'इमम्' यस्तो हुने थियो ।

त्यस्तै– अनयोः पवित्रम् कुलम् । एनयोः प्रभूतं स्वम् (यी दुईको कुल पवित्र छ । यी दुईको धन पनि प्रचुर छ ।) यहाँ पहिलो वाक्यमा कुलको पवित्रता विधान गर्न इदम् शब्दको ओस्को रूप प्रयोग गरिएको छ । दोस्रो वाक्यमा पुनः धनको प्रचुरताको विधानका निमित्त इदम् शब्दको ओस्को रूप प्रयोग गरिएको छ । अतः दोस्रो वाक्यमा इदम् शब्दका स्थानमा अन्वादेश अर्थ बुझिएकोले एन आदेश गरेर 'एनयोः' भनिएको छ ।

**एनम्**– अन्वादेश अर्थमा इदम् शब्ददेखि द्वितीयाको द्विवचन अम् आयो, 'इदम्+अम्' भयो, "द्वितीयाटौस्स्वेनः"ले इदम्का स्थानमा एन आदेश भयो, 'एन+अम्' भयो । सवर्ण दीर्घलाई बाधेर पूर्वसवर्ण दीर्घ पायो, त्यसलाई बाधेर "अमि पूर्वः"ले पूर्वरूप भयो 'एनम्' सिद्ध भयो ।

**एनौ**– इदम् शब्ददेखि अन्वादेश अर्थमा द्वितीयाको द्विवचन औट् आयो, 'इदम्+औ' भयो, 'औ'मा जस्तै बाध्यबाधकभाव भएपछि वृद्धि भयो, 'एनौ' सिद्ध भयो ।

**एनान्**–इदम् शब्ददेखि अन्वादेश अर्थ बुझिंदा द्वितीयाको बहुवचन जस् आयो, एन आदेश भयो, 'एन+अस्' भयो, रामशब्दमा जस्तै प्रक्रिया भयो, 'एनान्' बन्यो ।

**एनेन**– इदम् शब्ददेखि अन्वादेश अर्थमा तृतीयाको एकवचन टा आयो, एन आदेश भयो, गुण भयो, 'एनेन' सिद्ध भयो ।

**एनयोः** इदम् शब्ददेखि अन्वादेश अर्थमा षष्ठीको द्विवचन ओस् आयो, एन आदेश भयो, 'एन+ओस्' भयो, "ओसि च"ले एनका अकारको एकार, अय् आदेश, रुत्व, विसर्ग भयो, 'एनयोः' सिद्ध भयो । सप्तमीको द्विवचनमा पनि यही प्रक्रियाद्वारा 'एनयोः' हुन्छ ।

**नकारान्तशब्द**– राजन् (राजा)

**राजा**– राजन् शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'राजन्+स्' भयो, उपधासंज्ञा भयो, "सर्वनामस्थाने चा०"ले राजन्का उपधाका अकारको स्थानमा दीर्घ भयो, 'राजान+स्' भयो, सकारको "हल्ङ्याप्०"ले लोप भयो, नकारको 'नलोपः०'ले लोप भयो, 'राजा' सिद्ध भयो ।

**न ङीति**– नकारको लोप नहोस् [५१] ङि र संबुद्धि पर भएमा ।

**हे राजन्**– राजन् शब्ददेखि संबोधन अर्थ बुझिंदामा प्रथमाको एकवचन सु आयो, संबुद्धि संज्ञा भयो, अनुबन्धलोप भयो, 'राजन्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, राजन् भयो, "प्रत्ययलोपे०" लाएर राजन्लाई पदसंज्ञा भयो, "नलोपः०"ले नकारको लोप पायो, पाएमा "न ङिसंबुद्ध्योः"ले नकारको लोप-निषेध भयो, हे शब्दको पूर्वप्रयोग भयो, 'हे राजन्' सिद्ध भयो ।

---

५१ ङि पर भएमा नकारको लोप लोकमा समास बाहेक अन्यत्र पाउँदैन । समासमा "ङावुत्तरपदे०"ले निषेध गरिहाल्छ । अतः ङि पर भएमा नकारको लोपको निषेध गरिएको वैदिक प्रयोगका निमित्त हो । वेदमा 'परमे व्योमन्' आदि ठाउँमा "सुपां सुलुक्०"ले ङि को लुक् हुँदा ङि पर भएमा पदान्त नकार पाइन्छ ।

**वा.** (ङावुत्तरपदे प्रतिषेधो वक्तव्यः) । ब्रह्मनिष्ठः । राजानौ । राजानः । राज्ञः ॥

२८१. **नलोपः सुप्स्वरसंज्ञातुग्विधिषु कृति ८ । २ । २ ॥**

सुब्विधौ स्वरविधौ संज्ञाविधौ कृति तुग्विधौ च नलोपोऽसिद्धो नान्यत्र-राजाश्व इत्यादौ । इत्यसिद्धत्वादात्वमेत्वमैस्त्वं च न । राजभ्याम् । राजभिः । राजभ्यः ।

---

**(वा.) ङावुत्तरेति-** उत्तरपद पर हुने ङि पर भएमा नलोप निषेध नहोस् भन्नु ।

**ब्रह्मनिष्ठः-** ब्रह्मणि निष्ठा यस्य यस्तो विग्रहमा 'ब्रह्मन्+ङि+निष्ठा+सु' यहाँ समास भएर विभक्तिको लुक् भयो । निष्ठाको ह्रस्व भयो, 'ब्रह्मन्+निष्ठ' भयो, ब्रह्मन्लाई पदसंज्ञा भएपछि "नलोपः"ले नकारको लोप पायो, "न ङिसंबुद्ध्योः"ले लोपको निषेध पाएकोमा "ङावुत्तरपदे०"ले निषेधको निषेध भएपछि नकारको लोप भयो, सु आयो, रुत्व, विसर्ग भयो, 'ब्रह्मनिष्ठः' सिद्ध भयो ।

राजानौ राजन् शब्ददेखि औ आयो, 'राजन्+औ' भयो, "सर्वनामस्थाने०"ले उपधाको दीर्घ भयो, 'राजानौ' सिद्ध भयो ।

**राजानः-** राजन् शब्ददेखि जस् आयो, 'राजन्+अस्' भयो, उपधादीर्घ भयो, रुत्व, विसर्ग भयो, 'राजानः' सिद्ध भयो । अम् र औट्मा पनि उपधादीर्घ भए पछि राजानम्, राजानौ, यी दुई रूप हुन्छन् ।

**राज्ञः-** राजन् शब्ददेखि शस् आयो, 'राजन्+अस्' भयो "अल्लोपोऽनः"ले अन्को अकारको लोप हुँदा 'राज्+न्+अस्' भयो नकारको "स्तोःश्चुना श्चुः"ले श्चुत्व भयो, 'राज्+ञ्+अस्'मा ज र ञ मिलेर ज्ञ भयो, 'राज्ञस्' रुत्व, विसर्ग भयो, 'राज्ञः' सिद्ध भयो ।

**नलोप इति-** नकारको लोप असिद्ध हुन्छ भने सुप्विधि, स्वरविधि, संज्ञाविधि, कृत्प्रत्यय निमित्तक तुग्विधिमा मात्र असिद्ध होस् अन्यत्र नहोस् । अर्थात् राजाश्व आदि स्थलमा असिद्ध नहोस् ।

**राजाश्वः-** राज्ञः अश्वः यस विग्रहमा 'राजन्+ङस्+अश्व+सु' यसको समास भयो, विभक्तिको लुक् भयो, 'राजन्+अश्व' भयो, नकारको लोप भयो, 'राज+अश्व' यहाँ "अकः सवर्णे दीर्घः"ले दीर्घ पाएको "पूर्वत्रासिद्धम्"ले नलोप असिद्ध पाएको थियो, पाएमा "नलोपः सुप्स्वर०"ले सुब्विधि स्वरविधि संज्ञाविधि कृत्प्रत्ययनिमित्तक तुग्विधि गर्दामा मात्र नकारको लोप असिद्ध होस् अन्यत्र नहोस् भनेकोले यहाँ उपर्युक्त कुनै कार्य गर्नु छैन र नकारको लोप असिद्ध भएन, सिद्ध नै भयो र "अकः सवर्णे दीर्घः"ले दीर्घ भयो, 'राजाश्व' शब्द बन्यो, सु आयो, 'राजाश्वः' सिद्ध भयो ।

**इत्यसिद्धत्वादिति-** यो सूत्र लाएर नकारलोप असिद्ध भएकोले 'राजभ्याम्' यहाँ आत्व, ("सुपि च"ले दीर्घ) 'राजभ्यः' यहाँ एत्व, ("बहुवचने झल्येत्"ले) र 'राजभिः' यहाँ ऐस्त्व ("अतो भिस ऐस्"ले) हुँदैन ।

**राजभ्याम्-** राजन् शब्ददेखि तृतीयाको द्विवचन भ्याम् आयो, 'राजन्+भ्याम्' भयो, पदसंज्ञा, नकारलोप भयो, 'राज+भ्याम्' राजका अकारको "सुपि च"ले दीर्घ पाएकोमा "नलोप सुप्स्वर०"ले यहाँ सुब्विधि गर्नुछ र नकारको लोप असिद्ध भएर 'राजन्+भ्याम्' यस्तै देखेकोले दीर्घ भएन 'राजभ्याम्' सिद्ध भयो ।

**राजभिः-** राजन् शब्ददेखि तृतीयाको बहुवचन भिस् आयो, पदसंज्ञा भयो, नकारलोप भयो, भएपछि "अतो भिस ऐस्" ले पाएमा सुब्विधि हुनाले "नलोपः सुप्स्वर०"ले नलोप असिद्ध भएकोले ऐस् भएन, रुत्व, विसर्ग भयो, 'राजभिः' सिद्ध भयो ।

**राजभ्यः-** राजन् शब्ददेखि चतुर्थीबहुवचन भ्यस् आयो, पदसंज्ञा भएपछि नलोप भयो,

राज्ञि,राजनि । राजसु ॥ यज्वा । यज्वानौ । यज्वानः ॥

**२८२. न संयोगाद्वमन्तात् ६ । ४ । १३७ ॥**

वमन्तसंयोगादनोऽकारस्य लोपो न । यज्वनः । यज्वना ।

---

"बहुवचने झल्येत्"ले राजका अकारको एत्व पाएको "नलोपः०"[५२]ले यहाँ सुप्‌विधि हुनाले नलोप असिद्ध भयो र एत्व भएन, सकारको रुत्व, विसर्ग भयो, 'राजभ्यः' सिद्ध भयो । यस्तै प्रकारले पञ्चमीको बहुवचनमा पनि 'राजभ्यः' सिद्ध भयो ।

**राज्ञि,' राजनि**– राजन् शब्ददेखि ङि आयो, राजन् इ भयो "अल्लोपोऽनः"ले नित्य अन्‌का अकारको लोप पाएमा "विभाषा ङिश्योः"ले वैकल्पिक लोप भयो, 'राज्न्+इ' भयो, श्चुत्व भएर नकारको ञकार भयो, ज् र ञ् मिलेर ज्ञ भयो, 'राज्ञि' सिद्ध भयो, अकारको लोप नभएमा 'राजनि' सिद्ध भयो ।

**राजसु**– राजन् शब्ददेखि सुप् आयो, नकारको लोप भयो, "नलोपःसुपस्वर०"ले नकारको लोप असिद्ध भयो र "वहुवचने०"ले एत्व भएन, 'राजसु' सिद्ध भयो ।

**राजन् शब्दका रूप–**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | राजा | राजानौ | राजानः | **द्वि.** | राजानम् | राजानौ | राज्ञः |
| **तृ.** | राज्ञा | राजभ्याम् | राजभिः | **च.** | राज्ञे | राजभ्याम् | राजभ्यः |
| **प.** | राज्ञः | राजभ्याम् | राजभ्यः | **ष.** | राज्ञः | राज्ञोः | राज्ञाम् |
| **स.** | राज्ञि / राजनि | राज्ञोः | राजसु | **सं.** | हे राजन् ! | हे राजानौ ! | हे राजानः ! |

**यज्वा**– (विधिपूर्वक यज्ञ गरिसकेको व्यक्ति) यज्वन् शब्ददेखि प्रथमाको एकवचन **सु** आयो, 'यज्वन्+स्' भयो, "सर्वनामस्थाने चासंबुद्धौ"ले उपधादीर्घ भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, 'यज्वान्' भयो, नकारको "नलोपः०"ले लोप भयो, 'यज्वा' सिद्ध भयो ।

**यज्वानौ**– यज्वन् शब्ददेखि औ आयो, उपधादीर्घ भयो, 'यज्वानौ' सिद्ध भयो ।

**यज्वानः**– यज्वन् शब्ददेखि जस् आयो, उपधादीर्घ भयो, 'यज्वानस्' भयो, रुत्व, विसर्ग भयो, 'यज्वानः' सिद्ध भयो । अम् औट्‌मा 'यज्वानम्', 'यज्वानौ' हुन्छ । राजन् शब्दमा जस्तै प्रक्रिया हुन्छ ।

**नसंयोगादिति**– वकार र मकार अन्तमा हुने संयोगदेखि पर रहेका अन्‌का अकारको लोप नहोस् ।

**यज्वनः**- यज्वन् शब्ददेखि शस् आयो, 'यज्वन्+अस्' भयो, "अल्लोपोऽनः"ले अकारको लोप पाएकोमा "न संयोगाद्वमन्तात्"ले वकारान्त संयोगदेखि पर रहेको हुनाले अन्‌का अकारको लोप भएन, लाग्न गयो, यज्वनस् भयो, रुत्व, विसर्ग भयो, 'यज्वनः' सिद्ध भयो ।

**यज्वना**- यज्वन् शब्ददेखि टा आयो 'यज्वन्+आ' भयो, "अल्लोपोऽनः"ले अकारको लोप पाएकोमा "न संयोगाद्"ले निषेध भयो, 'यज्वना' सिद्ध भयो । यस्तै प्रकारले ङेआदि अजादि विभक्तिमा पनि अन्‌का अकारको लोप निषेध हुन्छ । हलादि विभक्तिमा राजन् शब्दमा जस्तै प्रक्रिया हुन्छ, 'तद्वत्' रूप हुन्छन् ।

---

५२ "पूर्वत्रासिद्धम्" भन्ने सूत्रले नलोप असिद्ध हुने भए पछि "नलोपः सुप्स्वरसंज्ञा०" यो सूत्र आरम्भ गर्नु व्यर्थ भयो र "व्यर्थं सत् किञ्चिद् ज्ञापयति" (व्यर्थ भएपछि केही जनाउँछ) भनेकोले यस सूत्रले यो कुरा जनायो "नलोपोऽसिद्धो भवति चेत्तर्हि सुब्विधौ स्वरविधौ संज्ञाविधौ कृति तुग्विधौ चासिद्धो नान्यत्र" (यदि नकारको लोप असिद्ध हुन्छ भने सुब्विधि, स्वरविधि, संज्ञाविधि, कृत्प्रत्ययनिमित्तक तुग्विधि गर्दामा मात्र असिद्ध होस्, अन्यत्र नहोस्) । यो नियम नभए पनि राजभिः, राजभ्यः, राजसु, यहाँ त "पूर्वत्रासिद्धम्"ले असिद्ध पाउँथ्यो, फल के त ? भने 'राजाश्वः' यहाँ उपर्युक्त चार विधि गर्नु छैन र नकारको लोप असिद्ध भएन, "अकः सवर्णे०"ले दीर्घ भयो ।

यज्वभ्याम् ॥ ब्रह्मणः । ब्रह्मणा ॥

**२८३. इन्हन्पूषार्यम्णां शौ ६ । ४ । १२ ॥**

एषां शावेवोपधाया दीर्घो नान्यत्र । इति निषधे प्राप्ते-

**२८४. सौ च ६ । ४ । १३ ॥**

इन्नादीनामुपधाया दीर्घोऽसंबुद्धौ सौ । वृत्रहा ॥

---

**यज्वन् शब्दका रूप-**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| प्र. | यज्वा | यज्वानौ | यज्वानः | द्वि. | यज्वानम् | यज्वानौ | यज्वनः |
| तृ. | यज्वना | यज्वभ्याम् | यज्वभिः | च. | यज्वने | यज्वभ्याम् | यज्वभ्यः |
| पं. | यज्वनः | यज्वभ्याम् | यज्वभ्यः | ष. | यज्वनः | यज्वनोः | यज्वनाम् |
| स. | यज्वनि | यज्वनोः | यज्वसु । | सं. | हे यज्वन् ! | हे यज्वानौ ! | हे यज्वानः ! |

मकारान्तसंयोगदेखि पर रहेको अन्का अकारको पनि लोप हुँदैन । यसको उदाहरण- ब्रह्मन् शब्द हो । यसका रूप पनि यज्वन् शब्दका जस्तै हुन्छन् । ब्रह्मन् शब्दमा णत्व कार्य विशेष छ ।

**ब्रह्मणः**- ब्रह्मन् शब्ददेखि शस् आयो, 'ब्रह्मन्+अस्' भयो, "अल्लोपोऽनः" अकारको लोप पाएकोमा मकारान्त संयोगदेखि पर रहेको अन् हुनाले "न संयोगाद्"ले निषेध भयो, 'ब्रह्मनस्' भयो, "अट्कुप्वाङ्०"ले नकारका स्थानमा णकार भयो, रुत्व, विसर्ग भयो, 'ब्रह्मणः' सिद्ध भयो ।

**ब्रह्मणा**- ब्रह्मन् शब्ददेखि टा आयो, 'ब्रह्मन्+आ' भयो, "अल्लोपोऽनः"ले अन्का अकारको लोप पाएकोमा "न संयोगाद्०"ले निषेध भयो, नकारको णत्व भयो, 'ब्रह्मणा' सिद्ध भयो, । दिग्दर्शनार्थ दुई रूप दिइयो, अरू रूप 'यज्वन्' शब्दमा झैं सिद्ध गर्नू ।

**इन्हन्निति**- इन् अन्तमा हुने शब्द, हन् अन्तमा हुने शब्द, पूषन् शब्द, र अर्यमन् शब्दको जस् र शस्का स्थानमा आदेश भएको शि पर भएमा मात्र उपधा दीर्घ होस्, अन्यत्र नहोस् ।

यो सूत्र नियमार्थ हो । "शि सर्वनामस्थानम्"ले जस् शस्का स्थानमा आदेश भएको शिलाई सर्वनामस्थान संज्ञा भैहाल्छ, इन्नन्त, हनन्त, पूषन्, अर्यमन्, सबै नान्तशब्द छन् । "सर्वनामस्थाने चासम्बुद्धौ"ले सर्वनामस्थान पर भएको हुँदा दीर्घ हुने नै थियो । अतः "सिद्धे सत्यारभ्यमाणो विधिर्नियमाय भवति" यो न्याय लगाएर यो सूत्रको इन्नन्त हनन्त पूषन् अर्यमन् शब्दका उपधाको दीर्घ हुन्छ भने, जस् र शस्का स्थानमा आदेश भएको शि परभएमा मात्र होस्, अन्यत्र नहोस् यस्तो नियम भयो । त्यसकारण शार्ङ्गिणौ, यशस्विनौ, वृत्रहणौ, पूषणौ, अर्यमणौ आदि स्थलमा दीर्घ हुँदैन ।

**इतीति**- यो सूत्रले उपधादीर्घको निषेध प्राप्त भएपछि-

**सौचेति**- इन्नन्त शब्द हनन्त शब्द पूषन् शब्द र अर्यमन् शब्दका उपधाका स्थानमा दीर्घ होस् संबुद्धिभिन्न सु पर भएमा ।

[५३]**वृत्रहा**- (इन्द्र) वृत्रहन् शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'वृत्रहन्+स्' भयो, "सर्वनामस्थाने०"ले दीर्घ पाएको "इन्हन्पूषार्यम्णां शौ"ले इन्नन्त हनन्त, पूषन्, अर्यमन्, शब्दको जस् र शस्का स्थानमा आदेश भएको शि परभएमा मात्र उपधा दीर्घ होस् अन्यत्र नहोस् भनेकोले यो हनन्त शब्द छ, जस् शस्का स्थानमा आदेश भएको शि पर छैन र निषेध भयो, अनि

५३ वृत्रं हतवानिति विग्रहे "ब्रह्मभ्रूणवृत्रेषु०" इति हन्तेः क्विप्, 'वृत्र+ङस्+हन्' इत्यत्रोपपदसमासः ।

हे वृत्रहन् ॥

२८५. **एकाजुत्तरपदे णः** ८ । ४ । १२ ॥

एकाजुत्तरपदं यस्य तस्मिन्समासे पूर्वपदस्थान्निमित्तात्परस्य प्रातिपदिकान्तनुम्विभक्तिस्थस्य नस्य णः । वृत्रहणौ ॥

२८६. **हो हन्तेर्ञ्णिन्नेषु** ७ । ३ । ५४ ॥

ञिति णिति प्रत्यये नकारे च परे हन्तेर्हकारस्य कुत्वम् । वृत्रघ्नः, इत्यादि ।

---

"सौ च"ले इन्नन्त, हनन्त, पूषन्, अर्यमन्, शब्दको संबुद्धिभिन्न सु पर भएमा दीर्घ होस् भनेकोले यहाँ हनन्त शब्द छ वृत्रहन् र संबुद्धिभिन्न सुपर हुनाले उपधाका स्थानमा दीर्घ हुँदा आकार भयो, 'वृत्रहान्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, नकारको "न लोपः प्रातिपदिकान्तस्य"ले लोप भयो, 'वृत्रहा' सिद्ध भयो ।

**एकाजुत्तरपदे-** इति एकाच् छ उत्तर पद जुन समासको त्यो समासमा पूर्व पदमा रहेको निमित्तदेखि पर रहेका प्रातिपदिकका अन्तमा रहेको नकार नुम्को नकार र विभक्तिमा रहेको नकारका स्थानमा णकार आदेश होस् ।

**वृत्रहणौ-** वृत्रहन् शब्ददेखि औ आयो, 'वृत्रहन्+औ' भयो, "सर्वनामस्थाने चासंबुद्धौ"ले दीर्घ पाएकोमा "इन्हन्पूषार्यम्णां शौ"ले इनन्तशब्द हनन्त शब्द पूषन् शब्द अर्यमन् शब्दको, जस् र शस्का स्थानमा आदेश भएको शि पर भएमा मात्र उपधादीर्घ होस् अन्यत्र नहोस् भनेकोले यहाँ हनन्त शब्द छ जस् र शस्का स्थानमा आदेश भएको शि पर छैन र दीर्घ भएन । 'वृत्रहन्+औ' यहाँ वृत्रहन्मा हन् यो एकाच् उत्तरपद छ र पूर्वपदमा रहेको निमित्त वृत्रको रेफ छ र "एकाजुत्तरपदे णः"ले प्रातिपदिकान्त वृत्रहन्को नकारका स्थानमा णकार भयो, 'वृत्रहणौ' सिद्ध भयो । जस्मा 'वृत्रहणः', अम्मा 'वृत्रहणम्' औट् मा 'वृत्रहणौ' यी रूप यही प्रकारले सिद्ध हुन्छन् । वृत्रहणौ यहाँ अखण्डपद नभएकोले "अट्कुप्वाङ्०"ले णत्व पाउँदैन र यो सूत्र चाहिन्छ । 'वृत्रहन्' शब्दमा वृत्र यो एकपद र 'हन्' यो एकपद गरी दुई पद छन् ।

**हो हन्तेरिति-** ञकार र णकारको इत्संज्ञा हुने प्रत्यय परभएमा र अव्यवहित नकार पर भएमा पनि हन् धातुका हकारका स्थानमा कुत्व (कवर्ग आदेश) होस् ।

**वृत्रघ्नः-** वृत्रहन् शब्ददेखि शस् आयो, 'वृत्रहन्+अस्' भयो, अस्लाई पर राखेर वृत्रहन् यसलाई अङ्गसंज्ञा भएपछि "अल्लोपोऽनः"ले अन्का अकारको लोप भयो, 'वृत्रहन्+अस्' भयो, 'वृत्रह्न्+अस्' यहाँ अव्यवहित नकार पर भएको, हन् धातुको हकार हुनाले हकारका स्थानमा "हो हन्तेर्ञ्णिन्नेषु"ले कवर्ग क,ख,ग,घ,ङ जम्मै पायो, कुन गर्ने भन्ने नियम भएन । "स्थानेऽन्तरतमः" लाएर स्थानीका स्थानमा विचार गर्दा स्थानी हकारको कण्ठस्थान छ, आदेश क,ख,ग,घ,ङ यी सबै कण्ठस्थानी छन् र सबै पायो, स्थानबाट नियम भएन । अर्थमा विचार गर्दा हकारको मात्र अर्थ छैन नियम भएन । अब गुणमा जाँदा स्थानी हकारको ईषद्विवृत प्रयत्न छ आदेश क,ख,ग,घ,ङ सबैको स्पृष्ट प्रयत्न छ, नियम भएन । अब बाह्यप्रयत्नमा विचार गर्दा हकारको संवार नाद घोष महाप्राण प्रयत्न छ, आदेश क,ख,ग,घ,ङ मा त्यस्तै संवार नाद घोष महाप्राण प्रयत्न भएको घ छ र ह्का स्थानमा घ् भयो, 'वृत्रघ्नस्' भयो, रुत्व, विसर्ग भयो, 'वृत्रघ्नः' सिद्ध भयो ।

**इत्यादीति-** यस्तै प्रकारले ङे, ङसि आदि अजादि विभक्ति परभएमा अन्का अकारको लोप, हकारको कुत्व भएर घकार हुन्छ । ङि मा "विभाषा ङिश्योः"ले वैकल्पिक अन्का अकारको लोप हुने हुनाले वृत्रघ्नि, वृत्रहणि यी दुई रूप हुन्छन् ।

---

एवं शार्ङ्गिन, यशस्विन्, अर्यमन, पूषन् ॥

**२८७. मघवा बहुलम् ६ । ४ । १२८ ॥**

मघवन्शब्दस्य वा तृ इत्यन्तादेशः । ऋ इत् ॥

**२८८. उगिदचां सर्वनामस्थानेऽधातोः ७ । १ । ७० ॥**

अधातोरुगितो नलोपिनोऽञ्चतेश्च नुम् स्यात्सर्वनामस्थाने परे । मघवान् ।

---

**वृत्रहन् शब्दका रूप-**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| प्र. | वृत्रहा | वृत्रहणौ | वृत्रहणः | द्वि. | वृत्रहणम् | वृत्रहणौ | वृत्रघ्नः |
| तृ. | वृत्रघ्ना | वृत्रहभ्याम् | वृत्रहभिः | च. | वृत्रघ्ने | वृत्रहभ्याम् | वृत्रहभ्यः |
| प. | वृत्रघ्नः | वृत्रहभ्याम् | वृत्रहभ्यः | ष. | वृत्रघ्नः | वृत्रघ्नोः | वृत्रघ्नाम् |
| स. | वृत्रघ्नि/वृत्रहणि | वृत्रघ्नोः | वृत्रहसु । | सं. | हे वृत्रहन् ! | हे वृत्रहणौ ! | हे वृत्रहणः ! |

**एवमिति-** यस्तै प्रकारले शार्ङ्गिन् (विष्णु) । यशस्विन् (कीर्तिमान्) । अर्यमन, पूषन् (सूर्य) शब्द पनि जान्नू । "सर्वनामस्थाने०"ले पाएको उपधादीर्घलाई "इन्हन्पूषार्यम्णां०"ले नियम गरेर निषेध हुने इन्नन्तशब्द-शार्ङ्गिन्, यशस्विन् शब्द, हनन्त वृत्रहन् शब्द, अनि अर्यमन् शब्द र पूषन् शब्द यी शब्दहरू नान्त भए पनि सर्वनामस्थान पर भएमा उपधा दीर्घ हुँदैन भन्ने बुझाउन, एवं शार्ङ्गिन्, यशस्विन्, अर्यमन्, पूषन्, भनिएको हो ।

**विशेष-** णित् प्रत्यय पर भएमा हन् धातुका हकारका स्थानमा "हो हन्तेः०"ले कुत्व हुँदा 'जघान' आदि रूप तिङन्तमा हुन्छन् । ञित् प्रत्यय पर भएमा कुत्व हुँदा 'घातः' इत्यादि रूप कृदन्तमा हुन्छन् ।

**मघवेति-** मघवन् शब्दको विकल्पले तृ अन्त्य अल्का स्थानमा आदेश होस् ।

**ऋइदिति-** तृको ऋकार इत्संज्ञक हो (अर्थात् इत्संज्ञा भएर त्यसको लोप हुन्छ) ।

**उगिदचामिति-** धातुभिन्न उगिदन्त अङ्गको र नकारको लोप हुने अञ्च्धातुको पनि नुम् आगम होस् सर्वनामस्थान पर भएमा । 'मघवन्' यसको अन्त्य अल्-नकारका स्थानमा "मघवा बहुलम्"ले विकल्पले तृ आदेश भयो, तृका ऋकारको इत्संज्ञा भयो, लोप भयो, 'मधवत्' शब्द बन्यो ।

**मघवान्-** मघवत् शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'मघवत्+स्' भयो, स् यसलाई सर्वनामस्थानसंज्ञा भएपछि "उगिदचां सर्वनामस्थानेऽधातोः"ले 'मघवत्' यो धातुभिन्न उगिदन्त (उक्-ऋको इत्संज्ञा भएर बाँकी रहेको त् अन्तमा हुने) अङ्ग छ, सर्वनामस्थान सुको 'स्' पर छ र नुम् भयो, अनुबन्धलोप भएर न् यो "मिदचोऽन्त्यात्परः" लगाएर मघवका अकारदेखि पर भयो । 'मघवन्त्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, मघवन्त् भयो । तकारको "संयोगान्तस्य लोपः"ले लोप भयो, मघवन् नकारको "नलोपः प्रातिपदिकान्तस्य"ले लोप पाएकोमा संयोगान्त लोप असिद्ध भएर प्रातिपदिकान्त नकार नभएकोले लोप भएन । "सर्वनामस्थाने चा०"ले दीर्घ पाएकोमा पनि संयोगान्तलोप असिद्ध पाएको थियो, "इह उपधादीर्घे कर्तव्ये संयोगान्तलोपस्यासिद्धत्वं न भवति बहुलग्रहणात्" 'यहाँ उपधादीर्घ गर्दा संयोगान्तलोप असिद्ध हुँदैन "मघवा बहुलम्" यस सूत्रमा बहुल ग्रहण गरेको हुनाले' भनेकोले संयोगान्तलोप सिद्ध नै भयो र उपधादीर्घ भयो, 'मघवान्' सिद्ध भयो ।

**मघवन्तौ-** मघवन् शब्दका स्थानमा विकल्पले तृ आदेश भएर मघवत् शब्द बनेकै छ मघवत् शब्ददेखि औ आयो, 'मघवत्+औ' भयो, "उगिदचां०"ले नुम् भयो, नकारको "नश्चापदान्तस्य

मघवन्तौ । मघवन्तः । हे मघवन् । मघवद्भ्याम् । तृत्वाभावे मघवा । सुटि राजवत् ॥

झलि"ले अनुस्वार र "अनुस्वारस्य ययि०"ले परसवर्ण भयो, 'मघवन्तौ' सिद्ध भयो ।

**मघवन्तः**- मघवत् शब्ददेखि जस् आयो, 'मघवत्+अस्' भयो, "उगिदचां सर्वनामस्थाने०"ले नुम् भयो, 'मघवन्त्+अस्' नकारको अनुस्वार परसवर्ण भयो, रुत्व, विसर्ग भयो, 'मघवन्तः' सिद्ध भयो ।

**हे मघवन्**- मघवत् शब्ददेखि संबोधन अर्थमा प्रथमाको एकवचन सु आयो, "उगिदचाँ०"ले नुम् भयो, "सर्वनामस्थाने चासंबुद्धौ"ले संबुद्धिभिन्न सर्वनामस्थान पर भएमा भनेकोले यहाँ संबुद्धि पर छ र उपधाको दीर्घ भएन, 'मघवन्' यस्तै रह्यो, हे शब्दको पूर्वप्रयोग भयो, 'हे मघवन्' सिद्ध भयो । औ जसमा 'हे मघवन्तौ', 'हे मघवन्तः' यी रूप हुन्छन् ।

अम्, औट्, मा नुम् भएर 'मघवन्तम्', 'मघवन्तौ', शस्मा सर्वनामस्थान पर नहुनाले नुम् हुँदैन 'मघवतः' हुन्छ । यस्तै टाआदि अजादि विभक्तिमा नुम् नहुनाले मघवता आदि रूप हुन्छन् । विशेष कार्य केही छैन । हलादि विभक्तिमा पनि विशेष कार्य केही छैन भ्याम् भिस्मा जश्त्व भएर 'मघवद्भ्याम्' आदि रूप हुन्छन् । सुप्मा जश्त्व चर्त्व भएर 'मघवत्सु' हुन्छ । यो तृ अन्तादेश भएर बनेका मघवत् शब्दका रूपहरूको दिग्दर्शन तल दिइन्छ ।

**मघवत् शब्दका रूप-**

| **विभक्ति** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| **प्र.** | मघवान् | मघवन्तौ | मघवन्तः |
| **द्वि.** | मघवन्तम् | मघवन्तौ | मघवतः |
| **तृ.** | मघवता | मघवद्भ्याम् | मघवद्भिः |
| **च.** | मघवते | मघवद्भ्याम् | मघवद्भ्यः |
| **प.** | मघवतः | मघवद्भ्याम् | मघवद्भ्यः |
| **ष.** | मघवतः | मघवतोः | मघवताम् |
| **स.** | मघवति | मघवतोः | मघवत्सु |
| **सं.** | हे मघवन् ! | हे मघवन्तौ ! | हे मघवन्तः ! |

**तृत्वाभाव इति**- तृ अन्तादेश नभएका पक्षमा मघवन् शब्द । सुट् (सर्वनामस्थान)मा राजन्शब्द जस्तै हुन्छ ।

**मघवा**- मघवन् शब्ददेखि सु आयो, 'मघवन्+स्' भयो, "सर्वनामस्थाने०"ले उपधादीर्घ भयो 'मघवान्+स्' भयो, सकारको "हलङ्याब्भ्यो०"ले लोप भयो, नकारको "नलोपः प्रातिपदिकान्तस्य"ले लोप भयो, 'मघवा' सिद्ध भयो ।

**हे मघवन्**- मघवन् शब्ददेखि संबोधन अर्थमा प्रथमाको एकवचन सु आयो । 'मघवन्+स्' भयो, "हलङ्याब्भ्यो०" ले सुको लोप भयो, मघवन् भयो, नकारको "नलोपः प्रातिपदिकान्तस्य" ले लोप पाएकोमा "न ङिसंबुद्ध्योः" ले निषेध भयो, हे शब्दको पूर्व प्रयोग भयो, 'हे मघवन्' सिद्ध भयो ।

मघवन् शब्दका अन्त्यअल्का स्थानमा तृ आदेश भएर बनेको मघवत् शब्दको संबुद्धिमा पनि हे मघवन् यो रूप हुन्छ । तृ आदेश नभएको मघवन् शब्दको संबुद्धिमा पनि हे मघवन् यही रूप हुन्छ, तर साधन प्रक्रिया अलग छ । जो माथि दिइएको छ ।

**२८९. श्वयुवमघोनामतद्धिते ६ । ४ । १३३ ॥**

अन्नन्तानां भानामेषामतद्धिते संप्रसारणम् । मघोनः । मघोना । मघवभ्याम् । एवं श्वन्, । युवन् ॥

---

[५४] **श्वयुवमघोनामिति-** अन् अन्तमा हुने भसंज्ञक श्वन्, युवन्, मघवन्, यी शब्दका स्थानमा तद्धितभिन्न प्रत्यय पर भएमा संप्रसारण होस् ।

**मघोनः-** मघवन् शब्ददेखि शस् आयो, 'मघवन्+अस्' भयो "यचि भम्"ले भसंज्ञा भयो, "श्वयुवमघोनामतद्धिते"ले अन्नन्त भसंज्ञक मघवन् शब्द छ तद्धित प्रत्यय पर छैन र मघवन् शब्दका स्थानमा संप्रसारण पायो, संप्रसारण भनेको के त ? "इग्यणः संप्रसारणम्"ले यण्का स्थानमा प्रयोग गरिने इक्लाई संप्रसारण संज्ञा हुन्छ भन्दछ, अतः मघवन् शब्दको वकारका स्थानमा इक्- इ,उ,ऋ,लृ सबै पायो "स्थानेऽन्तरतमः" लगाएर आन्तरतम्यात् उकार भयो, 'मघ+उ+अन्+अस्' "सम्प्रसारणाच्च"ले पूर्वरूप भयो, 'मघ+उन्+अस्', "आद्गुणः"ले 'मघ+उन्'मा गुण भयो, 'मघोनस्' भयो, रुत्व, विसर्ग भयो, 'मघोनः' सिद्ध भयो ।

यस्तै प्रकारले टा आदि अजादि विभक्ति पर भएमा भसंज्ञा भएपछि संप्रसारण हुन्छ र 'मघोना', 'मंघोने' आदि रूप हुन्छन् ।

**मघवभ्याम्-** मघवन् शब्ददेखि भ्याम् आयो, 'मघवन्+भ्याम' भयो भ्याम्लाई पर राखेर मघवन्लाई "स्वादिष्वसर्वनामस्थाने"ले पदसंज्ञा भएपछि नकारको "नलोपः प्रातिपदिकान्तस्य"ले लोप भयो, 'मघवभ्याम्' सिद्ध भयो । यस्तै प्रकारले अरू हलादि विभक्तिमा पनि नकारको लोप हुन्छ । अथवा हलादिमा सर्वत्र मघवन् शब्द राजन् शब्द जस्तै हुन्छ ।

**तृत्व नभएका पक्षमा मघवन् शब्दका रूपः**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | मघवा | मघवानौ | मघवानः | **द्वि.** | मघवानम् | मघवानौ | मघोनः |
| **तृ.** | मघोना | मघवभ्याम् | मघवभिः | **च.** | मघोने | मघवभ्याम् | मघवभ्यः |
| **पं.** | मघोनः | मघवभ्याम् | मघवभ्यः | **ष.** | मघोनः | मघोनोः | मघोनाम् |
| **स.** | मघोनि | मघोनोः | मघवसु | **सं.** | हे मघवन् ! | हे मघवानौ ! | हे मघवानः ! |

**एविमिति-** यस्तै प्रकारले श्वन्(कुकुर)शब्द र युवन् (युवा) शब्द पनि जान्नु । श्वन्शब्दका रूप-श्वा, श्वानौ, श्वानः । श्वानम्, श्वानौ, शुनः । शुना श्वभ्याम्, श्वभिः । शुने, श्वभ्याम्, श्वभ्यः । शुनः श्वभ्याम् श्वभ्यः । शुनः शुनोः शुनाम् । शुनि शुनोः श्वसु । हे श्वन् हे श्वानौ ! हे श्वानः ।

---

५४ यस सूत्रको विषयमा प्रश्नोत्तरात्मक एक रोचक श्लोक प्रसिद्ध छ- **काचं मणिं काञ्चनमेकसूत्रे ग्रथ्नासि बाले किमिदं विचित्रम् । विचारवान् पाणिनिरेकसूत्रे श्वानं युवानं मघवानमाह ॥**
(माला उनी रहेकी एक बालिकासँग एक पण्डितजीले प्रश्न गरे- तिमी काँच मणि र सुन एउटै धागोमा उनेकी छौ के विचित्र हो यो ? तब पाणिनीय व्याकरण पढेकी ती केटीले भनिन्- पाणिनीय व्याकरणमा यौटै सूत्रमा अर्थात् "श्वयुवमघोनामतद्धिते" यस सूत्रमा कुकुर, युवा र इन्द्रलाई एकै ठाउँमा राखिएको छ ! विचारवान् पाणिनि मुनिले "**विद्याविनयसम्पन्ने ब्राह्मणे गवि हस्तिनि । शुनि चैव श्वपाके च पण्डिताः समदर्शिनः ॥**" यो गीतोक्त पद्यानुसार सबैको आत्मा समान छ भन्ने सोचेर एकै ठाउँमा राखेका होलान्, यही सोचेर मैले पनि काच, मणि र काञ्चनलाई एक सूत्रमा उन्दैछु । यो के आश्चर्यको कुरा भयो र ?)

**२९०. न संप्रसारणे संप्रसारणम् ६ । १ । ३७ ॥**

संप्रसारणे परतः पूर्वस्य यणः संप्रसारणं न स्यात् । इति यकारस्य नेत्वम् । अत एव ज्ञापकादन्त्यस्य यणः पूर्वं संप्रसारणम् । यूनः । यूना । युवभ्याम् इत्यादि ॥ अर्वा । हे अर्वन् ॥

**२९१. अर्वणस्त्रसावनञः ६ । ४ । १२७ ॥**

नञा रहितस्यार्वन्नित्यस्याङ्गस्य तृ इत्यन्तादेशो न तु सौ ।

---

**न संप्रसारण इति-** संप्रसारण पर भएमा पूर्वका यण्का स्थानमा संप्रसारण नहोस् । यो सूत्र लाएर यकारका स्थानमा इकार हुँदैन । अर्थात् संप्रसारण हुदैंन ।

**अत एवेति-** यही सूत्र ज्ञापक हुनाले पछिल्लो यण्का स्थानमा पहिले संप्रसारण हुन्छ । यो भनाइको तात्पर्य हो-यदि अघिल्लो यण्का स्थानमा पहिले संप्रसारण गर्ने हो भने पर संप्रसारण मिल्दैन, यो सूत्र व्यर्थ हुन्छ । व्यर्थ भएर यही कुरा जनाउँछ- "अन्त्य यण्का स्थानमा संप्रसारण पहिले होस्" अन्त्य यण्का स्थानमा पहिले संप्रसारण भएपछि यो सूत्र चरितार्थ हुन्छ । संप्रसारण पर भए पछि पूर्वका यण्को यसै सूत्रले संप्रसारण निषेध हुन्छ ।

**यूनः-** युवन् शब्ददेखि शस् आयो, 'युवन्+अस्' भयो "यचि भम्" ले युवन्लाई भसंज्ञा भयो, "श्वयुवमघोनामतद्धिते"ले अन्नन्त भसंज्ञक युवन्शब्द छ, तद्धितप्रत्यय पर छैन र संप्रसारण पायो, संप्रसारण भनेको के त ? "इग्यणः संप्रसारणम्"ले यण्का स्थानमा प्रयोग गरिने इक्लाई सम्प्रसारण भन्छन्, यहाँ यण् दुई छन् दुवैका स्थानमा संप्रसारण पायो पाएमा "न संप्रसारणे संप्रसारणम्"ले संप्रसारण पर भएमा पूर्वका यण्को संप्रसारण नहोस् भनेकोले आफू व्यर्थ नहुन "अन्त्य यण्को पहिले संप्रसारण हुन्छ" भन्ने कुरा ज्ञापन गऱ्यो र अन्त्ययण् युवन्का वकारका स्थानमा पहिले सम्प्रसारण हुँदा सम्प्रसारण- इ,उ,ऋ,लृमध्ये आन्तरतम्यात् उकार भयो, 'यु+उ+अन्+अस्' भयो, यकारका स्थानमा पुनः संप्रसारण पाएमा "न संप्रसारणे०"ले निषेध भयो, 'उ+अन्' यहाँ "सम्प्रसारणाच्च"ले उकार र अकारका स्थानमा पूर्वरूप उ एकादेश भयो, 'यु+उन्+अस्' भयो, 'यु+उन्'मा "अकः सवर्णे"ले दीर्घ भयो, 'यून्+अस्'- 'यूनस्' भयो, रुत्व, विसर्ग भयो, 'यूनः' सिद्ध भयो ।

**यूना-** युवन् शब्ददेखि तृतीयाको एकवचन टा आयो, 'युवन्+आ' भयो, युवन्लाई भसंज्ञा भएपछि पूर्ववत्, "श्वयुवमघोनाम्०"ले अन्त्य यण्का स्थानमा पहिले सम्प्रसारण भयो । यकारका स्थानमा "न संप्रसारणे"ले संप्रसारण निषेध, पूर्वरूप, दीर्घ भएर 'यूना' यो रूप सिद्ध भयो । यस्तै प्रकारले ङे मा- 'यूने', ङसि-ङस्मा- 'यूनः' ओस्मा- 'यूनोः' आम्मा- 'यूनाम्' ङिमा 'यूनि' रूप हुन्छन् ।

**युवभ्याम्-** युवन् शब्ददेखि तृतीयाको एकवचन भ्याम् आयो, 'युवन्+भ्याम्' भयो, पदसंज्ञा भयो, "नलोपः०"ले नकारको लोप भयो, 'युवभ्याम्' सिद्ध भयो । अरू हलादिमा पनि यस्तै प्रकारले नकारको लोप भएर युवभिः आदि रूप हुन्छन् ।

**अर्वन्-** (घोडा) **अर्वा-** अर्वन् शब्ददेखि सु आयो, 'अर्वन्+स्' भयो, "सर्वनामस्थाने चा"ले उपधाको दीर्घ भयो, 'अर्वान्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, नकारको "न लोपः प्रातिपदिकान्तस्य" ले लोप भयो, 'अर्वा' सिद्ध भयो ।

**हे अर्वन्-** अर्वन् शब्ददेखि संबोधन अर्थमा प्रथमाको एकवचन सु आयो, 'अर्वन्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, नकारको "नलोपः प्रातिपदिकान्तस्य"ले लोप पाएकोमा "न ङिसंबुद्ध्योः"ले निषेध भयो, 'अर्वन्', हे शब्दको पूर्वप्रयोग भयो, 'हे अर्वन्' सिद्ध भयो ।

**अर्वण इति-** नञ् समासले रहित भएका अर्वन् शब्दका अन्त्य अल्का स्थानमा तृ आदेश होस् सु पर भएमा त नहोस् ।

---

अर्वन्तौ । अर्वन्तः । अर्वद्भ्यामित्यादि ॥

२९२. **पथिमथ्यृभुक्षामात् ७ । १ । ८५ ॥**

एषामाकारोऽन्तादेशः स्यात् सौ परे ॥

२९३. **इतोऽत् सर्वनामस्थाने ७ । १ । ८६ ॥**

पथ्यादेरिकारस्याकारः स्यात्सर्वनामस्थाने परे ॥

२९४. **थो न्थः ७ । १ । ८७ ॥**

पथिमथोस्थस्य न्थादेशः सर्वनामस्थाने । पन्थाः ।

---

**अर्वन्तौ–** अर्वन् शब्ददेखि औ आयो, "अर्वणस्त्रसावनञः"ले अन्त्यअल्-नकारका स्थानमा तृ भयो ऋकारको इत्संज्ञा लोप भयो, 'अर्वत्+औ' भयो "उगिदचां सर्वनामस्थानेऽधातोः"ले नुम् भयो, नकारका स्थानमा अनुस्वार परसवर्ण भयो, 'अर्वन्तौ' सिद्ध भयो । यस्तै प्रकारले जस्, अम्, औट्, मा नुम् हुन्छ । शस् आदि विभक्ति सर्वनामस्थान नहुनाले "उगिदचां०"ले नुम् हुँदैन । शस्मा 'अर्वतः' टामा 'अर्वता' हुन्छ ।

**अर्वद्भ्याम्–** अर्वन् शब्ददेखि तृतीयाको एकवचन भ्याम् "अर्वणस्त्रसा०"ले नकारका स्थानमा तृ आदेश भयो, 'अर्वत्+भ्याम्' भयो, "झलां जशोऽन्ते" जश्त्व भएर तकारको दकार भयो, 'अर्वद्भ्याम्' सिद्ध भयो । यस्तै प्रकारले सुप् बाहेक अरू हलादि विभक्तिमा जश्त्व हुन्छ । अजादिविभक्तिमा तृ आदेशबाहेक अरू विशेष कार्य छैन ।

**अर्वन् शब्दका रूप–**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | अर्वा | अर्वन्तौ | अर्वन्तः | **द्वि.** | अर्वन्तम् | अर्वन्तौ | अर्वतः |
| **तृ.** | अर्वता | अर्वद्भ्याम् | अर्वद्भिः | **च.** | अर्वते | अर्वद्भ्याम् | अर्वद्भ्यः |
| **प.** | अर्वतः | अर्वद्भ्याम् | अर्वद्भ्यः | **ष.** | अर्वतः | अर्वतोः | अर्वताम् |
| **स.** | अर्वति | अर्वतोः | अर्वत्सु | **सं.** | हे अर्वन् ! | हे अर्वन्तौ ! | हे अर्वन्तः ! |

**पथिमथीति–** पथिन् शब्द, मथिन् शब्द, ऋभुक्षिन् शब्दका अन्त्य अल्का स्थानमा आकार आदेश होस् सु पर भएमा ।

**इतोदिति–** पथिन्, मथिन्, ऋभुक्षिन् शब्दका इकारका स्थानमा अकार आदेश होस् सर्वनामस्थान पर भएमा ।

**थोन्थ इति–** पथिन् शब्द र मथिन् शब्दका थकारका स्थानमा न्थ् आदेश होस् सर्वनामस्थान पर भएमा ।

**पथिन्–**(बाटो) शब्द **पन्थाः**–पथिन् शब्ददेखि सु आयो, 'पथिन्+स' भयो, "पथिमथ्य-भुक्षामात्"ले सुपर हुनाले पथिन्का नकारका स्थानमा आकार आदेश भयो, 'पथि+आ+स्' भयो, "इतोऽत्सर्वनामस्थाने"ले सर्वनामस्थान सु पर भएकोले पथिका इकारका स्थानमा अकार भयो, 'पथ+आ+स्' भयो, पथका थकारका स्थानमा "थोन्थः"ले न्थ् आदेश भयो, 'पन्थ+आ+स्' भयो । 'पन्थ+आस्' यहाँ "अकःसवर्णे दीर्घः"ले दीर्घ भयो,='पन्थास्' भयो, रुत्व, विसर्ग भयो, 'पन्थाः' सिद्ध भयो ।

**पन्थानौ–** पथिन् शब्ददेखि औ आयो, 'पथिन्+औ' भयो, "इतोऽत्सर्वनामस्थाने"ले सर्वनामस्थान पर भएकोले पथिका इकारका स्थानमा अकार भयो, "थोन्थः"ले थकारका स्थानमा न्थ् आदेश

पन्थानौ । पन्थानः ॥

**२९५. भस्य टेर्लोपः ७ । १ । ८८ ॥**

भस्य पथ्यादेष्टेर्लोपः । पथः । पथा । पथिभ्याम् । एवं मथिन्, ऋभुक्षिन् ॥

**२९६. ष्णान्ता षट् १ । १ । २४ ॥**

षान्ता नान्ता च संख्या षट्संज्ञा स्यात् । पञ्चन्शब्दो नित्यं बहुवचनान्तः ।

---

भयो, 'पन्थन्+औ' भयो, "सर्वनामस्थाने चा०"ले उपधादीर्घ भयो, 'पन्थानौ' सिद्ध भयो ।

**पन्थानः**- पथिन् शब्ददेखि जस् आयो, 'पथिन्+अस्' भयो, "इतोऽत्०"ले पथिका इकारका स्थानमा अकार भयो, "थोन्थः"ले 'न्थ्'आदेश भयो, उपधादीर्घ भयो, 'पन्थानस्' भयो, रुत्व विसर्ग भयो, 'पन्थानः' सिद्ध भयो । अम् र औट्मा पूर्ववत् इकारका स्थानमा अकार, 'न्थ्'आदेश उपधादीर्घ भएपछि, 'पन्थानम्', 'पन्थानौ' सिद्ध हुन्छ ।

**भस्येति**- भसंज्ञक पथिन्, मथिन्, ऋभुक्षिन् शब्दका टिको लोप होस् ।

**पथः**- पथिन् शब्ददेखि शस् आयो, 'पथिन्+अस्' भयो, अस्लाई पर राखेर पथिन् यसलाई "यचि भम्"ले भसंज्ञा भयो, पथिन्का इन् भागलाई "अचोऽन्त्यादि टि"ले टिसंज्ञा भयो, "भस्य टेर्लोपः"ले भसंज्ञक पथिन्शब्द हुनाले टिसंज्ञक इन्, को लोप भयो, 'पथ्+अस्'-पथस् भयो, सकारको रुत्व, विसर्ग भयो, 'पथः' सिद्ध भयो । यस्तै प्रकारले टा आदि अजादि विभक्तिमा पनि सर्वत्र टिलोप हुन्छ ।

**पथिभ्याम्**- पथिन् शब्ददेखि तृतीयाको द्विवचन भ्याम् आयो, 'पथिन्+भ्याम्' भयो, भ्याम्लाई पर राखेर पथिन् यसलाई "स्वादिष्वसर्वनामस्थाने"ले पदसंज्ञा भयो, नकारको "नलोपः प्रातिपदिकान्तस्य"ले लोप भयो, 'पथिभ्याम्' सिद्ध भयो । अरू हलादि विभक्तिमा पनि यस्तै गरी नकारको लोप हुन्छ । सुप्मा "आदेशप्रत्यययोः"ले षत्व भएर 'पथिषु' हुन्छ ।

**पथिन् शब्दका रूप**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | पन्थाः | पन्थानौ | पन्थानः | **द्वि.** | पन्थानम् | पन्थानौ | पथः |
| **तृ.** | पथा | पथिभ्याम् | पथिभिः | **च.** | पथे | पथिभ्याम् | पथिभ्यः |
| **प.** | पथः | पथिभ्याम् | पथिभ्यः | **ष.** | पथः | पथोः | पथाम् |
| **स.** | पथि | पथोः | पथिषु | **सं.** | हे. पन्थाः ! | हे पन्थानौ ! | हे पन्थानः ! |

**एवमिति**- यस्तै प्रकारले मथिन् शब्द र ऋभुक्षिन् शब्द पनि जान्नु ।

**मथिन्**- (मधानी) मन्थाः, मन्थानौ, मन्थानः, मन्थानम्, मन्थानौ, मथः, इत्यादि ।

**ऋभुक्षिन्**- (इन्द्र) ऋभुक्षाः, ऋभुक्षाणौ, ऋभुक्षाणः, ऋभुक्षाणम्, ऋभुक्षाणौ ऋभुक्षः इत्यादि । ऋभुक्षिन् शब्दमा णत्व कार्य विशेष छ ।

**ष्णान्तेति**- मूर्धन्य षकारान्त र नकारान्त संख्यावाचक शब्द षट्संज्ञक होस् । पञ्चन् शब्द नित्य बहुवचनान्त छ ।

**पञ्चन्**-(पाँच सङ्ख्या) **पञ्च**- पञ्चन् शब्दलाई नकारान्त संख्यावाचक शब्द हुनाले "ष्णान्ता षट्"ले षट्संज्ञा भयो, भएपछि- पञ्चन् शब्ददेखि जस् आयो, 'पञ्चन्+अस्' भयो, "षड्भ्यो लुक्"ले अस्को लुक् भयो । लुक् भनेको "प्रत्ययस्य लुक्श्लुलुपः"ले गरेको प्रत्ययको अदर्शन हो भनेकोले अस्को लोप भयो, पञ्चन् भयो, "प्रत्ययलोपे प्रत्ययलक्षणम्"ले लुक् भएको

पञ्च । पञ्च । पञ्चभिः । पञ्चभ्यः । पञ्चभ्यः । नुट् ॥

२९७. **नोपधायाः** ६ । ४ । ७ ॥

नान्तस्योपधाया दीर्घो नामि । पञ्चानाम् । पञ्चसु ॥

२९८. **अष्टन आ विभक्तौ** ७ । २ । ८४ ॥

हलादौ वा स्यात् ।

२९९. **अष्टाभ्य औश्** ७ । १ । २१ ॥

कृताकारादष्टनो जश्शसोरौश् । अष्टभ्य इति वक्तव्ये कृतात्वनिर्देशो जश्शसोर्विषये

---

जस्लाई अन्तमा भएको मानेर "सुप्तिङन्तं पदम्"ले पद संज्ञा भयो "नलोपः प्राति०"ले नकारको लोप भयो, 'पञ्च' सिद्ध भयो ।

**पञ्च**– पञ्चन् शब्ददेखि शस् आयो, 'पञ्चन्+अस्' पूर्ववत् अस्को लुक्, पदसंज्ञा नकारको लोप भयो, 'पञ्च' सिद्ध भयो ।

**पञ्चभिः** पञ्चन् शब्ददेखि भिस् आयो, 'पञ्चन्+भिस्' भयो, भिस्लाई पर राखेर पञ्चन्लाई "**स्वादिष्वसर्वनामस्थाने**०"ले पदसंज्ञा, "नलोपः प्राति०"ले नकारको लोप भयो, रुत्व, विसर्ग भयो, 'पञ्चभिः' सिद्ध भयो ।

**पञ्चभ्यः** पञ्चन् शब्ददेखि चतुर्थीको बहुचन भ्यस् आयो, 'पञ्चन+भ्यस्' भयो, भिस्मा जस्तै पदसंज्ञा र नकारको लोप भयो, 'पञ्चभ्यस्', रुत्व, विसर्ग, भयो, 'पञ्चभ्यः' सिद्ध भयो । पञ्चमीको बहुवचन पनि त्यही प्रक्रियाद्वारा 'पञ्चभ्यः' सिद्ध भयो ।

**नोपधेति**– नकारान्त अङ्गका उपधाका स्थानमा दीर्घ होस् नाम् पर भएमा ।

**पञ्चानाम्**– पञ्चन् शब्ददेखि षष्ठीको बहुवचन आम् आयो 'पञ्चन्+आम्' भयो, "षट्चतुर्भ्यश्च"ले आम्को नुट्आगम भयो, 'पञ्चन्+नाम्' भयो, भएपछि "नोपधायाः"ले नकारान्त अङ्ग पञ्चन्को उपधा पञ्चको अकारका स्थानमा नाम् पर छ र दीर्घ हुँदा आकार भयो, 'पञ्चान्+नाम्' भयो, नाम्लाई पर राखेर पञ्चान्लाई "स्वादिष्वसर्वनामस्थाने"ले पदसंज्ञा भयो, नकारको "नलोपः प्रातिपदिकान्तस्य"ले लोप भयो, 'पञ्चानाम्' सिद्ध भयो ।

**पञ्चसु**– पञ्चन् शब्ददेखि सप्तमी बहुवचन सुप् आयो, 'पञ्चन्+सु' भयो, पूर्ववत् पदसंज्ञा नकारको लोप भयो, 'पञ्चसु' सिद्ध भयो ।

**अष्टन इति**– अष्टन् शब्दका नकारका स्थानमा आकार आदेश होस् विकल्पले विभक्ति पर भएमा ।

**अष्टभ्य इति**– अष्टभ्य यसो भन्नु पर्नेमा सूत्रमा आत्व गरेर गरिएको निर्देशले जस् र शस्का विषयमा आत्व हुन्छ भन्ने कुरा जनाउँछ ।

**यसको तात्पर्य**– "अष्टाभ्य औश्" भन्ने सूत्रमा अष्टभ्य यसो भन्नुपर्ने, अर्थात् अष्टभ्यः र अष्टाभ्यः को अर्थ यौटै हो । सूत्र निर्माण गर्दा "अर्धमात्रालाघवेन पुत्रोत्सवं मन्यन्तो वैयाकरणाः", "आधा मात्रा लाघव (कंती) हुँदा वैयाकरण पुत्रोत्सव मान्दछन्" अर्थात् अत्यन्त खुशी हुन्छन्, भन्ने आभाणक छ । अर्को कुरा आत्व नभएसम्म "अष्टाभ्य औश्"ले औश् पाउँदैन सूत्र व्यर्थ हुन्छ । अतः "व्यर्थं सत् किञ्चिज्ज्ञापयति" व्यर्थ भएको छँदो केही जनाउँछ, यो नियम पनि छ, अतः- सूत्रकर्ताले "अष्टाभ्यः" यस्तो किन पढेका हुन्, यही कुरा स्पष्ट गर्दै वृत्तिकार भन्दछन्- "अष्टभ्य इति वक्तव्ये कृतात्वनिर्देशो जश्शसोर्विषये आत्वं ज्ञापयति" 'अष्टभ्यः यसो भन्नुपर्नेमा आत्व गरेर गरिएको निर्देश जस् र शस्का विषयमा आत्व जनाउँछ' यो भनाइले जस् शस्का विषयमा अष्टन् शब्दका स्थानमा नित्य आत्व पाउँछ । तर "अष्टनो दीर्घात्" भन्ने सूत्रमा

आत्वं ज्ञापयति । अष्टौ । अष्टौ । अष्टाभिः । अष्टाभ्यः । अष्टाभ्यः । अष्टानाम् । अष्टासु । आत्वाभावे अष्ट, पञ्चवत् ।

**३००. ऋत्विग्दधृक्स्रग्दिगुष्णिगञ्चुयुजिक्रुञ्चां च ३ । २ । ५९ ॥**

एभ्यः क्विन् । अञ्चेः सुप्युपपदे, युजिक्रुञ्चोः केवलयोः ॥

---

"दीर्घात्" यो पद ज्ञापक भएकोले वैकल्पिक आत्व हुन्छ ।

**अष्टौ**– अष्टन् शब्ददेखि जस् आयो, 'अष्टन्+अस्' भयो, भएपछि "अष्टाभ्य औश्"ले आत्व गरिएको अष्टन् शब्द भन्छ, आत्व गर्ने सूत्र "अष्टन आ विभक्तौ"ले हलादि विभक्ति पर भएमा मात्र आत्व गर्छ, आत्व नभै "अष्टाभ्य औश्" लाग्दैन, अतः "अष्टाभ्य औश्" व्यर्थ भएर "अष्टभ्य इति वक्तव्ये०" यो ज्ञापन अनुसार अष्टभ्य भन्नुपर्नेमा आत्व गरेर गरिएको "निर्देशले जस् शस्का विषयमा आत्व जनाउँछ भनेकोले नित्य आत्व पाएमा "अष्टनो दीर्घात्" मा "दीर्घात्" पढ्नाको सामर्थ्यले अष्टन्का नकारका स्थानमा वैकल्पिक आत्व हुँदा "अलोऽन्त्यस्य" लगाएर आकार भयो, 'अष्ट+आ+अस्' भयो, दीर्घ भयो, 'अष्टा अस्' भयो, "अष्टाभ्य औश्"ले जस्का औश् आदेश भयो, शकारको इत्संज्ञा र लोप भयो, शित्वात् अस् पूरैका स्थानमा औ भयो, 'अष्टा+औ' भयो, "वृद्धिरेचि"लाई बाधेर पूर्वसवर्णदीर्घ पाएकोमा "नादिचि"ले निषेध भएपछि "बाधकाभावे०" लगाएर पुनः "वृद्धिरेचि"ले वृद्धि भयो, 'अष्टौ' सिद्ध भयो । शस्मा पनि यही प्रक्रियाद्वारा 'अष्टौ' यही रूप सिद्ध हुन्छ ।

**अष्टभिः**- अष्टन् शब्ददेखि भिस् आयो, 'अष्टन्+भिस्' भयो, "अष्टन आ विभक्तौ"ले अष्टन् नकारका स्थानमा वैकल्पिक आकार भयो, "अकः सवर्णे दीर्घः"ले दीर्घ भयो, रुत्व, विसर्ग भयो, 'अष्टाभिः' सिद्ध भयो ।

**अष्टाभ्यः**- अष्टन् शब्ददेखि चतुर्थीबहुवचन भ्यस् आयो, 'अष्टन्+भ्यस्' भयो, पूर्ववत् "अष्टन आ विभक्तौ"ले वैकल्पिक आत्व दीर्घ रुत्व, विसर्ग भयो, 'अष्टाभ्यः' सिद्ध भयो । पञ्चमीको बहुवचनमा पनि यही प्रक्रियाले 'अष्टाभ्यः' सिद्ध भयो ।

**अष्टानाम्**- अष्टन् शब्ददेखि आम् आयो, 'अष्टन्+आम्' भयो, "अष्टन'लाई "ष्णान्ता षट्" ले षटसंज्ञा भयो । "षट्चतुर्भ्यश्च"ले आम्को नुट् आगम भयो, हलादि विभक्ति पर हुनाले "अष्टन आ विभक्तौ"ले वैकल्पिक आत्व भयो, "अकः सवर्णे०"ले दीर्घ भयो, 'अष्टानाम्' सिद्ध भयो ।

**आत्वाभाव इति**- आत्व नभएको पक्षमा अष्टन् शब्द पञ्चन् शब्द जस्तै हुन्छ ।

**अष्ट**- अष्टन् शब्ददेखि जस् आयो, आत्व नभएको पक्षमा "अष्टाभ्य औश्" लागेन अष्टन् यसलाई "ष्णान्ता षट"ले षट्संज्ञा भयो, "षड्भ्यो लुक्"ले जस्को लुक् भयो, "प्रत्ययलोपे०" लगाएर अष्टन्लाई पदसंज्ञा भयो, "नलोपः०"ले नकारको लोप भयो, 'अष्ट' सिद्ध भयो । शस्मा पनि यही प्रक्रियाद्वारा 'अष्ट' सिद्ध हुन्छ । तृतीया आदि विभक्तिमा पञ्चन् शब्दमा जस्तै प्रक्रिया भएर अष्टभिः, अष्टभ्यः, अष्टभ्यः, अष्टानाम्, अष्टसु, यी रूप हुन्छन् ।

**अब जकारान्त शब्द ऋत्विज्**- (याजक, यज्ञ गर्ने व्यक्ति)

**ऋत्विगिति**- ऋतु शब्द पूर्वमा हुने यज् धातु, धृष् धातु, सृज् धातु, दिश् धातु, उद् पूर्वमा हुने ष्णिह् धातु अञ्चु धातु, युज् धातु क्रुञ्च धातुदेखि क्विन् प्रत्यय होस् ।

**अञ्चेरेति**- अञ्चु धातुदेखि सुबन्त उपपद भएमा मात्र क्विन् प्रत्यय हुन्छ ।

**युजिक्रुञ्चोरिति**- युज् धातु र क्रुञ्च धातुदेखि केवल (अनुपपद) भएमा मात्र क्विन् हुन्छ ।

कुञ्चेर्नलोपाभावश्च निपात्यते । कनावितौ ॥

**३०१. कृदतिङ् ३ । १ । ९३ ॥**

अत्र धात्वधिकारे तिङ्भिन्नः प्रत्ययः कृत्संज्ञः स्यात् ॥

**३०२. वेरपृक्तस्य ६ । १ । ६७ ॥**

अपृक्तस्य वस्य लोपः ॥

**३०३. क्विन्प्रत्ययस्य कुः ८ । २ । ६२ ॥**

क्विन्प्रत्ययो यस्मात्तस्य कवर्गोऽन्तादेशः पदान्ते । अस्यासिद्धत्वाच्चोः कुरिति कुत्वम् । ऋत्विक्, ऋत्विग् ।

---

**क्रुञ्चेरिति**– क्रुञ्च धातुको "अनिदितां हलः०"ले नलोप पाएमा, त्यसको अभाव निपातन गरिन्छ अर्थात् नकारको लोप हुँदैन ।

**कनाविति**– क्विन्मा ककार र नकार इत्संज्ञक हुन् । नकारको "हलन्त्यम्"ले र ककारको "लशक्वतद्धिते"ले इत्संज्ञा हुन्छ । इत्संज्ञा भएपछि लोप पनि हुन्छ भन्ने आशय हो । हुन त यहाँ क्विन् प्रत्ययको सर्वापहारी लोप हुन्छ । कनावितौ भनेर ककार नकारको इत्संज्ञा हुन्छ भनेर इकारको प्रसङ्ग न उठाउनुले बुझिन्छ इकार उच्चारणार्थ मानिएको छ । वकारको लोप गर्ने सूत्र अगाडि बताइन्छ ।

**कृदिति**– "धातोः" ३।१।९१ सूत्रको अधिकारमा पढिएको तिङ्भिन्न प्रत्यय कृत्संज्ञक होस् । "धातोः" ।३।१।९१ सूत्रको अधिकार ९२, ९३, ९४ आदि सूत्र हुँदै तीन अध्याय समाप्तिसम्म चल्छ । त्यहाँ धातुदेखि पर प्रत्ययहरूको विधान छ । ती प्रत्ययमा तिङ्लाई छोडेर अरूलाई कृत्संज्ञा हुन्छ । प्रकृत "ऋत्विग्दधृक्०" सूत्र "धातोः"को अधिकारमा पढिएको हुनाले क्विन्प्रत्ययलाई कृत्संज्ञा र क्विन्नन्तत्वात् "ऋत्विज्" आदि शब्द कृदन्त भएको हुनाले प्रातिपदिक संज्ञा भएर स्वादिको उत्पत्ति हुन्छ ।

**वेरिति**– अपृक्तसंज्ञक वकारको लोप होस् ।

**क्विन्प्रत्ययस्येति**– क्विन्प्रत्यय जस्जस्देखि देखिन्छ, ती ती धातुको अन्त्य अल्का स्थानमा कवर्गआदेश होस् पदान्तमा ।

**अस्येति**– यो सूत्र असिद्ध हुनाले "चोःकुः"ले कुत्व हुन्छ । यी दुवै सूत्र त्रिपादी हुन् त्रिपादीमा पूर्वभन्दा पर असिद्ध हुने हुनाले "चोःकुः"का दृष्टिमा "क्विन्प्रत्ययस्य कुः" असिद्ध हुन्छ । "चोःकु" भन्दा "क्विनृप्रत्ययस्य कुः" पर छ ।

**ऋत्विक्/ऋत्विग् (ऋतुमा यज्ञ गर्ने यजमान)**– ऋतौ यजति यस अर्थमा "ऋतु ङि पूर्वमा हुने यज् धातुदेखि ऋत्विदधृक्०"ले क्विन्प्रत्यय भयो, उपपदसमास भयो, विभक्तिको लोप भयो । ऋतुयज् क्विन् भयो, क्विन्लाई "कृदतिङ्"ले कृत्संज्ञा भयो, ककारको "लशक्वतद्धिते"ले इत्संज्ञा, नकारको "हलन्त्यम्"ले इत्सज्ञा भयो र दुवैको लोप भयो, इकार उच्चारणार्थ हुनाले स्वतः गयो, व् बाँकी रह्यो, 'ऋतु+यज्+व्' भयो, कित् वकार पर हुनाले "वचिस्वपियजादीनां किति"ले यज्का यकारका स्थानमा संप्रसारण इकार भयो, "सम्प्रसारणाच्च"ले पूर्वरूप भयो, 'ऋतु+इज्+व्' भयो, व् लाई अपृक्तसंज्ञा भयो, "वेरपृक्तस्य"ले वकारको लोप भयो, 'ऋतु+इज्'मा "इको यणचि"ले यण् भयो, ऋत्विज् शब्द बन्यो । ऋत्विज्लाई "कृत्तद्धितसमासाश्च"ले कृदन्तत्वात् प्रातिपदिकसंज्ञा भयो । ऋत्विज् शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'ऋत्विज्+स्' भयो,

ऋत्विजौ । ऋत्विग्भ्याम् ॥

**३०४. युजेरसमासे ७ । १ । ७१ ॥**

युजेः सर्वनामस्थाने नुम् स्यादसमासे । सुलोपः । संयोगान्तलोपः । कुत्वेन नस्य ङः । युङ् ।

---

सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, प्रत्ययलोपे लाएर पदसंज्ञा भएपछि ऋत्विज्का जकारका स्थानमा "क्विन्प्रत्ययस्य कुः"ले कुत्व पायो, त्यसलाई बाधेर "चोः कुः"ले कुत्व हुँदा "यथासंख्यम्०" लगाएर जकारका स्थानमा गकार भयो, "वाऽवसाने"ले वैकल्पिक चर्त्व भयो, 'ऋत्विक्' भयो । चर्त्व नभएमा 'ऋत्विग्' भयो र यी दुई रूप सिद्ध भए ।

**ऋत्विजौ**– ऋत्विज् शब्ददेखि औ आयो, जकार औमा लाग्न गयो, 'ऋत्विजौ' सिद्ध भयो । यस्तै प्रकारले सबै अजादि विभक्ति पर भएमा जकार विभक्तिमा लाग्न जान्छ, अरू विशेष कार्य केही छैन । जस्मा ऋत्विजः, अम्मा ऋत्विजम्, औट्मा ऋत्विजौ, शस्मा ऋत्विजः, टामा ऋत्विजा हुन्छ । यस्तै अरू अजादि विभक्तिमा पनि जान्नु ।

**ऋत्विग्भ्याम्**– ऋत्विज् शब्ददेखि भ्याम् आयो, 'ऋत्विज्+भ्याम' भयो, पदसंज्ञा भएपछि "क्विन्प्रत्ययस्य०"लाई बाधेर "चोः कुः"ले कुत्व भयो, 'ऋत्विग्भ्याम्' सिद्ध भयो । अरू हलादि विभक्तिमा पनि पदसंज्ञा भएर कुत्व भएपछि रूप सिद्ध हुन्छन् । सुप्मा कुत्व भएर गकार भएपछि गकारको "खरि च"ले 'चर्त्व' हुन्छ, "आदेशप्रत्यययोः"ले षत्व हुन्छ, कषसंयोग हुँदा क्ष भएर 'ऋत्विक्षु' सिद्ध हुन्छ ।

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र. | ऋत्विक्/ग्, | ऋत्विजौ | ऋत्विजः |
| द्वि. | ऋत्विजम् | ऋत्विजौ | ऋत्विजः |
| तृ. | ऋत्विजा | ऋत्विग्भ्याम् | ऋत्विग्भिः |
| च. | ऋत्विजे | ऋत्विग्भ्याम् | ऋत्विग्भ्यः |
| प. | ऋत्विजः | ऋत्विग्भ्याम् | ऋत्विग्भ्यः |
| ष. | ऋत्विजः | ऋत्विजोः | ऋत्विजाम् |
| स. | ऋत्विजि | ऋत्विजोः | ऋत्विक्षु |
| सं. | हे ऋत्विक्/ग् ! | ऋत्विजौ ! | ऋत्विजः ! |

**युजेरिति**– युज् धातुको सर्वनामस्थान पर भएमा नुम् होस् समास नभएमा ।

**युङ्(योगी)**– युज् धातुदेखि "ऋत्विग्दधृक्०"ले क्विन् प्रत्यय भयो, क्विन् प्रत्ययको पूर्ववत् सर्वापहारी लोप भयो, युज् शब्द बन्यो । युज् शब्ददेखि सु आयो, 'युज्+स्' भयो, सर्वनामस्थान स् पर भएकोले "युजेरसमासे"ले युज्को नुम् भयो, 'युन्ज् स्' भयो, सकारको हल्ङ्याब्भ्यो०"ले लोप भयो, जकारको संयोगान्त लोप भयो, युन् भयो, भएपछि "क्विन्प्रत्ययस्य कुः"ले युन्का नकारका स्थानमा कवर्ग क,ख,ग,घ,ङ सबै पायो, "स्थानेऽन्तरतमः" लाएर स्थानी युन्का नकारको दन्त स्थान छ आदेश "क,ख,ग,घ,ङ"मा दन्त स्थानी कुनै छैन, नियम भएन । अर्थमा जाँदा स्थानी नकारको मात्र अर्थ छैन, गुणमा जाँदा आभ्यन्तर प्रयत्नमा स्थानी नकारको स्पृष्ट प्रयत्न छ आदेश "क,ख,ग,घ,ङ" पनि सबै स्पृष्ट प्रयत्नवाला छन् नियम भएन । अब बाह्यप्रयत्नमा नकारको संवार नाद घोष अल्पप्राण प्रयत्न छ आदेशमा संवार नाद घोष अल्प प्राण प्रयत्न भएको ग र ङ छन् । यी दुईमध्ये

अनुस्वारपरसवर्णौ । युञ्जौ । युञ्जः । युग्भ्याम् ॥

**३०५. चोः कुः ८ । २ । ३० ॥**

चवर्गस्य कवर्गः स्याज्झलि पदान्ते च । सुयुक्, सुयुग् । सुयुजौ । सुयुग्भ्याम् ॥ खन् । खञ्जौ ।

---

स्थानी अनुनासिक नकारका स्थानमा अनुनासिक ङकार भयो, 'युङ्' सिद्ध भयो ।

**अनुस्वारेति-** "युञ्जौ" यहाँ अनुस्वार र परसवर्ण हुन्छन् ।

**युञ्जौ-** युज् शब्ददेखि औ आयो, 'युज्+औ' भयो, "युजेरसमासे"ले औ सर्वनामस्थान पर भएकोले युज्को नुम् भयो, 'युन्ज्+औ' नकारको "नश्चापदान्तस्य०"ले अनुस्वार "अनुस्वारस्य ययि०"ले परसवर्ण भयो, 'युञ्जौ' सिद्ध भयो । बाँकी सर्वनामस्थान (जस् अम् औट्) मा पनि "युजेरसमासे"ले नुम् अनुस्वार परसवर्ण भएर वर्णमेलन गरेपछि युञ्जः, युञ्जम्, युञ्जौ यी रूप सिद्ध हुन्छन् ।

**युजः-** युज् शब्ददेखि शस् आयो, 'युज्+अस्' भयो, (शस् सर्वनामस्थान नहुनाले नुम् भएन) वर्णसम्मेलन भयो र सकारको रुत्व विसर्ग हुँदा 'युजः' सिद्ध भयो ।

**युजा-** युज् शब्ददेखि टा आयो, 'युज्+आ', 'युजा' सिद्ध भयो ।

**युग्भ्याम्-** युज् शब्ददेखि भ्याम् आयो, 'युज्+भ्याम्' भयो, पदसंज्ञा भएपछि "क्विन्प्रत्ययस्य कुः"लाई बाधेर "चोः कुः"ले कुत्व हुँदा जकारका स्थानमा गकार भयो, 'युग्भ्याम्' सिद्ध भयो । यस्तै प्रकारले अरू हलादिमा पनि रूप सिद्ध हुन्छन् । सुप्मा कुत्व चर्त्व षत्व क्षत्व भएर 'युक्षु' यो रूप सिद्ध हुन्छ ।

**चोरिति-** चवर्गका स्थानमा कवर्ग आदेश होस् झल् पर भएमा र पदान्तमा पनि ।

[५५]**सुयुक्/सुयुग्-** सुयुज् शब्ददेखि सु आयो, 'सुयुज्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, "चोःकुः"ले कुत्व भयो, "वाऽवसाने"ले चर्त्व भयो, 'सुयुक्', चर्त्व नभएमा 'सुयुग्' यी दुई रूप सिद्ध भए ।

**सुयुजौ-** सुयुज् शब्ददेखि औ आयो, वर्णमेलन भयो, 'सुयुजौ' सिद्ध भयो ।

**सुयुग्भ्याम्-** सुयुज् शब्ददेखि तृतीयाको एकवचन भ्याम् आयो, "चोःकुः"ले कुत्व भयो, 'सुयुग्भ्याम्' सिद्ध भयो । यस्तै प्रकारले अजादिविभक्तिमा जकार विभिक्तिको अच्मा लाग्छ । हलादिमा कुत्व हुन्छ । सुपमा गत्व कत्व षत्व क्षत्व हुन्छ र सुयुक्षु हुन्छ ।

[५६]**खञ्ज्-** (डुँडो) । **खन्-** खञ्ज् शब्ददेखि सु आयो, 'खञ्ज्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो"ले लोप भयो, जकारको संयोगान्तलोप भयो, खञ् "निमित्तापाये नैमित्तिकस्याप्यपायः" यो परिभाषा लाएर ञकारको नकार भयो, 'खन्' भयो, नकारको "नलोपः०"ले लोप पाएकोमा संयोगान्त लोप असिद्ध भएर नकारको लोप भएन 'खन्' सिद्ध भयो ।

**खञ्जौ-** खञ्ज् शब्ददेखि औ आयो, 'खञ्ज्+औ' भयो, वर्णमेलन भयो, 'खञ्जौ' सिद्ध भयो । अरू अजादि विभक्तिमा पनि वर्णमेलन भएपछि रूप बन्दछ । आवश्यक स्थलमा रुत्व विसर्ग बाहेक अरू विशेष कार्य केही छैन ।

**खन्भ्याम्-** खञ्ज् शब्ददेखि भ्याम् आयो, 'खञ्ज्+भ्याम्' भयो, पदसंज्ञा भयो, "संयोगान्तस्य लोपः"ले जकारको लोप भयो, खञ्भ्याम् "निमित्तापाये०" लाएर निमित्त जकार नाश भएपछि

---

५५ सुष्ठु युङ्क्ते, यो विग्रहमा क्विप्प्रत्यय भएर 'सुयुक्'शब्द बन्दछ ।

५६ खजि गतिवैकल्ये धातुको इकारको इत्संज्ञा लोप भयो, "इदितो नुम् धातोः" ले नुम् भयो, अनुस्वार परसवर्ण भयो, 'खञ्ज्'धातु बन्यो, खञ्ज् धातुदेखि क्विप्प्रत्यय भयो, क्विप्प्रत्ययको सर्वापहारी लोप भयो, 'खञ्ज्'शब्द बन्यो ।

खन्भ्याम् ॥

**३०६. व्रश्चभ्रस्जसृजमृजयजराजभ्राजच्छशां षः ८ । २ । ३६ ॥**

झलि पदान्ते च । जश्त्वचर्त्वे । राट्,राड् । राजौ । राजः । राड्भ्याम् ॥

---

नैमित्तिक ञकारका नकार भयो, संयोगान्त लोप असिद्ध भएकोले नकारको "नलोपः प्राति०"ले लोप भएन, 'खन्भ्याम्' सिद्ध भयो । हलादि विभक्ति पर भएमा यस्तै प्रकारले सर्वत्र संयोगान्तलोप हुन्छ, "निमित्तापाये नैमित्तिकस्याप्यपायः" लाएर ञकारको नकार हुन्छ र रूप सिद्ध हुन्छन् । सुप्मा "नश्च"ले धुट् आगम भएर 'खन्त्सु', 'खन्सु' दुई रूप हुन्छन् ।

**खञ्ज् शब्दका रूप**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | खन् | खञ्जौ | खञ्जः | **द्वि.** | खञ्जम् | खञ्जौ | खञ्जः |
| **तृ.** | खञ्जा | खन्भ्याम् | खन्भिः | **च.** | खञ्जे | खन्भ्याम् | खन्भ्यः |
| **प.** | खञ्जः | खन्भ्याम् | खन्भ्यः | **ष.** | खञ्जः | खञ्जोः | खञ्जाम् |
| **स.** | खञ्जि | खञ्जोः | खन्त्सु/खन्सु | **सं** | हे खन् ! | हे खञ्जौ ! | हे खञ्जः ! |

यहाँ ध्यान दिनुपर्ने कुरा यो छ- हलादि विभक्तिमा खञ्ज्का जकारको संयोगान्तलोप भएपछि ञकारको परसवर्ण अनुस्वार दुवै नाश भएर नुम् आगम गर्दा भएको न् बाँकी रहन्छ । "नश्चापदान्तस्य०"ले पुनः अनुस्वार हुँदैन किनभने नकार पदान्त छ । सुप्मा सपादी "इदितो नुम् धातोः" ७।१।५८ ले गरेको नुम् हुनाले स्वतः सिद्ध छ । संयोगान्तलोप पनि "नश्चका" दृष्टिमा असिद्ध हुन्न, अतः नश्चले वैकल्पिक धुट् आगम हुन्छ भन्ने कुरा निर्विवाद छ ।

**व्रश्चेति**– व्रश्च धातु, भ्रस्ज धातु, सृज धातु, मृज धातु, यज धातु, राज धातु, भ्राज धातु र छकार, तालव्य शकार अन्तमा हुने धातुका अन्त्य अल्का स्थानमा षकार आदेश होस् झल् पर भएमा र पदान्तमा पनि ।

**राज्**- (राजा) । **राट्/राड्**– राज् शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'राज्+स' भयो, सकारको "हल्ङ्याब्भ्यो दीर्घात्०"ले लोप भयो, 'राज्' भयो, "प्रत्ययलोपे०" लगाएर राज्लाई पदसंज्ञा भएपछि "व्रश्चभ्रस्जसृजमृज०"ले राज्का जकारका स्थानमा षकार भयो, 'राष्' भयो, "झलां जशोऽन्ते"ले षकारका स्थानमा जश्त्व हुँदा आन्तरतम्यात् डकार भयो, "वाऽवसाने"ले चर्त्व भयो, 'राट्', चर्त्व नभएका पक्षमा 'राड्' यी दुई रूप सिद्ध भए ।

**राजौ**– राज् शब्ददेखि औ आयो, 'राज्+औ' भयो, वर्णमेलन भयो, 'राजौ' सिद्ध भयो ।

**राजः**- राज् शब्ददेखि जस् आयो, 'राज्+अस्' भयो, वर्णमेलन, रुत्व, विसर्ग भयो, 'राजः' सिद्ध भयो ।

**राड्भ्याम्**– राज् शब्ददेखि तृतीयाको द्विवचन भ्याम् आयो, 'राज्+भ्याम्' भयो, "व्रश्च भ्रस्ज०"ले षत्व भयो, जश्त्व भयो, 'राड्भ्याम्' सिद्ध भयो ।

अजादि विभक्तिमा राज्को जकार विभक्तिमा मिल्न जान्छ र सकारान्त विभक्ति भएका स्थलमा रुत्व विसर्ग हुन्छ । अन्यत्र केही कार्य छैन । हलादि विभक्तिमा षत्व र जश्त्व हुन्छ । सुप्मा जश्त्व भएपछि "ङः सि धुट्"ले वैकल्पिक धुट् आगम भएमा, 'राट्त्सु', धुट् नभएको पक्षमा 'राट्सु', यी दुई रूप हुन्छन् ।

एवं विभ्राट्, देवेट्, विश्वसृट् ॥ **वा.**(परौ व्रजेः षः पदान्ते)। परावुपपदे व्रजेः क्विप् स्याद्दीर्घश्च पदान्ते षत्वमपि।

---

**राज् शब्दका रूप–**

| **विभक्ति** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्र. | राट/राड् | राजौ | राजः |
| द्वि. | राजम् | राजौ | राजः |
| तृ. | राजा | राड्भ्याम् | राड्भिः |
| च. | राजे | राड्भ्याम् | राड्भ्यः |
| प. | राजः | राड्भ्याम् | राड्भ्यः |
| ष. | राजः | राजोः | राजाम् |
| स. | राजि | राजोः | राट्त्सु/राट्सु |
| सं. | हे राट्/हे राड्! | हे राजौ! | हे राजः! |

**एवमिति**– यस्तै प्रकारले विभ्राज् (सूर्य), देवेज् (देवपूजक) विश्वसृज् (ब्रह्मा) परिमृज् (शुद्ध गर्ने व्यक्ति) शब्द पनि जान्नु। विशेषेण भ्राजते यस अर्थमा वि उपसर्ग पूर्वमा हुने भ्राज् धातुदेखि क्विप् प्रत्यय भयो सर्वापहारी लोप भयो विभ्राज् शब्द बन्यो।

**विभ्राट/ड्**– विभ्राज् शब्ददेखि सु आयो, 'विभ्राज्+स्' भयो, सकारको "हलङ्याब्भ्यो०"ले लोप "व्रश्चभ्रस्ज०"ले षत्व, जश्त्व, चर्त्व, भयो, 'विभ्राट्', चर्त्व नभएमा 'विभ्राड्' यी दुई रूप सिद्ध भए।

'देवान्+यजति' यस विग्रहमा देव पूर्वमा हुने यज् धातुदेखि क्विप् प्रत्यय भयो, उपपदसमास भयो, विभक्तिको लुक् भयो, क्विप् प्रत्ययका ककार, पकार, इकारको इत्संज्ञा, लोप भयो, 'देव+यज्+व्' भयो, 'देव+यज्+व्' यहाँ "वचिस्वपियजादीनां०"ले कित् प्रत्यय व् परछ र यज् धातुका स्थानमा संप्रसारण पूर्वरूप भयो, 'देव+इज्+व्' भयो, व्कारको "वेरपृक्तस्य"ले लोप भयो, 'देव+इज्'मा गुण भयो, 'देवेज्'शब्द बन्यो।

**देवेट्/देवेड्**– देवेज् शब्ददेखि सु आयो, 'देवेज्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, देवेज्का जकारका स्थानमा "यज्धातु हुनाले "व्रश्चभ्रस्जसृज०"ले षत्व भयो, जश्त्व चर्त्व भयो, 'देवेट्' चर्त्व नभएमा 'देवेड्' यी दुई रूप सिद्ध भए।

विश्वं सृजति यस विग्रहमा, विश्व ङस् पूर्वमा हुने सृज् धातुदेखि क्विप् प्रत्यय भयो, समास, विभक्तिको लुक्, भयो, क्विप् प्रत्ययको सर्वापहारी लोप भयो, विश्वसृज् शब्द बन्यो।

**विश्वसृट्/ड्**– विश्वसृज् शब्ददेखि सु आयो, 'विश्वसृज्+स्' भयो, सकारको "हलङ्याब्भ्यो०"ले लोप भयो, विश्वसृज्का जकारका स्थानमा षत्व, जश्त्व, चर्त्व भयो, 'विश्वसृट्', चर्त्व नभएमा 'विश्वसृड्' यी दुइ रूप सिद्ध भए।

परिमृजति यस अर्थमा परि शब्दपूर्वक मृज्धातुदेखि क्विप् प्रत्यय भयो, समास भयो, क्विप् प्रत्ययको सर्वापहारी लोप भयो, परिमृज्शब्द बन्यो।

**परिमृट्/ड्**– परिमृज् शब्ददेखि सु आयो, 'परिमृज्+स्' भयो, सकारको लोप भयो, षत्व, जश्त्व, चर्त्व, भयो, 'परिमृट्', चर्त्व नभएमा 'परिमृड्' यी दुई रूप सिद्ध भए। दिग्दर्शनार्थ यहाँ विभ्राज्, देवेज्, विश्वसृज् शब्दका सुमा मात्र रूप दिइयो, अरू राज शब्दमा जस्तै ऊह गर्नु।

**परौ व्रजेरिति**– परि शब्द उपपद भएमा व्रज् धातुदेखि क्विप् प्रत्यय होस्, धातुका अकारका स्थानमा दीर्घ पनि होस्, पदान्तमा जकारको षत्व पनि होस्।

---

परिव्राट् । परिव्राजौ ॥

**३०७. विश्वस्य वसुराटोः ६ । ३ । १२८ ॥**

विश्वशब्दस्य दीर्घोऽन्तादेशः स्याद्वसौराट्शब्दे च परे । विश्वाराट्, विश्वाराड् । विश्वराजौ । विश्वाराड्भ्याम् ॥

---

परित्यज्य सर्वं व्रजति यस अर्थमा परि शब्दपूर्वक व्रज धातुदेखि प्रस्तुत वार्तिक "परौ व्रजेः०"ले क्विप् प्रत्यय भयो, व्रज्को अकारका स्थानमा दीर्घ आकार भयो, क्विप् प्रत्ययको सर्वापहारी लोप भयो, परिव्राज् शब्द बन्यो । परिव्राज् (सन्यासी) **परिव्राट्-ड्-** परिव्राज् शब्ददेखि सु आयो, 'परिव्राज्+स्' भयो, "हलङ्याब्भ्यो दीर्घात्०"ले सकारको लोप भयो, प्रस्तुत वार्तिकले नै पदान्त हुनाले परिव्राज्का जकारका स्थानमा षत्व भयो, परिब्राष् भयो, षकारको जश्त्व भएर डकार भयो, "वाऽवसाने"ले वैकल्पिक चर्त्व भएमा 'परिव्राट्' भयो, चर्त्व नभएमा 'परिव्राड्' यी दुई रूप सिद्ध भए ।

**परिव्राजौ-** परिव्राज् शब्ददेखि औ आयो, 'परिव्राज्+औ', 'परिव्राजौ' सिद्ध भयो । परिव्राज् शब्दका रूप राज् शब्दका जस्तै हुन्छन् । राज् शब्दमा "व्रश्चभ्रस्ज०"ले षत्व हुन्छ, यहाँ प्रस्तुत "परौ व्रजेः०" यही वार्तिकले षत्व हुन्छ ।

**विश्वस्येति-** विश्व शब्दको अन्त्य अल्का स्थानमा दीर्घ आदेश होस् वसुशब्द पर भएमा र राट् शब्द पर भएमा पनि । राट् यो पदान्तको उपलक्षणका निमित्त छ । अतः चर्त्व विवक्षित छैन ।

**विश्वराज्-**(परमात्मा) । **विश्वाराट/विश्वाराड्-** विश्वराज् शब्ददेखि सु आयो, 'विश्वराज्+स्' भयो, "हल्ङ्याब्भ्यो०"ले सुका स्कारको लोप भयो, "व्रश्चभ्रस्जसृजमृज०"ले षत्व भयो, जश्त्व भयो, विश्वराड् भयो, "विश्वस्य वसुराटोः"ले राट् यो पदान्तको उपलक्षण हुनाले राड् पदान्त छ र 'विश्व'का अकारका स्थानमा दीर्घ आकार भयो, विश्वाराड्, चर्त्व भयो, 'विश्वाराट्' चर्त्व नभएमा 'विश्वाराड्' सिद्ध भयो ।

**विश्वराजौ-** विश्वराज् शब्ददेखि औ आयो, वर्ण-मेलन भयो, 'विश्वराजौ' सिद्ध भयो । अजादि विभक्तिमा यसै प्रकारले विभक्तिमा जकार मिल्न जान्छ, अरू विशेष कार्य छैन ।

**विश्वाराड्भ्याम्-** विश्वराज् शब्ददेखि भ्याम् आयो, 'विश्वराज्+भ्याम्' भयो, "व्रश्चभ्रस्ज०"ले षत्व भयो, जश्त्व भयो, पदान्तत्वात् "विश्वस्य वसुराटोः"ले विश्वका अकारका स्थानमा आकार भयो, 'विश्वाराड्भ्याम्' सिद्ध भयो । सु र अन्य हलन्त विभक्ति पर भएमा पदान्त हुनाले दीर्घ हुन्छ, अजादि विभक्ति पर भएमा दीर्घ हुन्न । सुप्मा धुट् विकल्पले हुन्छ,'विश्वाराट्त्सु', 'विश्वाराट्सु' यी दुई रूप हुन्छन ।

**विश्वराज् शब्दका रूप-**

| **विभक्ति** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| **प्र.** | विश्वाराट्/ड् | विश्वराजौ | विश्वराजः |
| **द्वि.** | विश्वराजम् | विश्वराजौ | विश्वराजः |
| **तृ.** | विश्वराजा | विश्वाराड्भ्याम् | विश्वाराड्भिः |
| **च.** | विश्वराजे | विश्वाराड्भ्याम् | विश्वाराड्भ्यः |
| **प.** | विश्वराजः | विश्वाराड्भ्याम् | विश्वाराड्भ्यः |
| **ष.** | विश्वराजः | विश्वराजोः | विश्वराजाम् |
| **स.** | विश्वराजि | विश्वराजोः | विश्वाराट्त्सु/विश्वाराट्सु |
| **सं.** | हे. विश्वाराट्/ड् ! | हे विश्वराजौ ! | विश्वराजः ! |

**३०८. स्कोः संयोगाद्योरन्ते च ८ । २ । २९ ॥**

पदान्ते झलि च यः संयोगस्तदाद्योः स्कोर्लोपः । भृट् । सस्य श्चुत्वेन शः । "झलां जश् झशि" इति शस्य जः । भृज्जौ । भृड्भ्याम् ॥ त्यदाद्यत्वं पररूपत्वं च ॥

---

**स्कोः संयोगाद्योरिति–** पदान्तमा र झल् पर भएमा जो संयोग त्यसको आदिमा रहेका सकार र ककारको लोप होस् ।

**भृस्ज्–** (भर्साई ।) **भृट्/ड्–** भृज्जति यस विग्रहमा भ्रस्ज धातुदेखि क्विप् प्रत्यय भएर "ग्रहिज्या०"ले संप्रसारण गरेपछि भृस्ज् शब्द बन्दछ । भृस्ज् शब्ददेखि सु आयो, 'भृस्ज्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, भृस्ज् यसलाई पदसंज्ञा भएपछि संयोगान्तलोपलाई बाधेर "स्कोः संयोगाद्योः०" यो सूत्रले पदान्तमा स्ज् यो संयोग छ र त्यसको आदिमा रहेको सकारको लोप भयो, 'व्रश्च-भ्रस्ज०'ले षत्व भयो, 'भृष्', जश्त्व, चर्त्व भयो, 'भृट्', चर्त्व नभएका पक्षमा 'भृड्' यी दुई रूप भए ।

**सस्येति–** अजादि विभक्तिमा सकारको श्चुत्व भएर तालव्य शकार हुन्छ । "झलां जश् झशि"ले शकारका स्थानमा जकार हुन्छ ।

**भृज्जौ–** भृस्ज् शब्ददेखि औ आयो, 'भृस्ज्+औ' भयो, सकारको "स्तो श्चुना श्चुः"ले श्चुत्व भएर तालव्य शकार भयो, तालव्य शकारका स्थानमा "झलां जश् झशि"ले जश्त्व हुँदा जकार भयो, 'भृज्ज्+औ'=भृज्जौ सिद्ध भयो ।

यस्तै प्रकारले सबै अजादि विभक्तिमा दन्त्य सकारका स्थानमा श्चुत्व भएर तालव्यशकार जश्त्व भएर जकार हुन्छ अरू विशेष कार्य छैन ।

हलादि विभक्तिमा भृस्ज्का सकारको लोप जकारका स्थानमा षकार जश्त्व गरेर डकार गरेपछि रूप सिद्ध हुन्छन् । सुप्मा डकार गरेपछि "डः सि धुट्"ले वैकल्पिक धुट् आगम चर्त्व विशेष छ ।

**भृस्ज् शब्दका रूप–**

| **विभक्ति** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्र. | भृट्/भृड् | भृज्जौ | भृज्जः |
| द्वि. | भृज्जम् | भृज्जौ | भृज्जः |
| तृ. | भृज्जा | भृड्भ्याम् | भृड्भिः |
| च. | भृज्जे | भृड्भ्याम् | भृड्भ्यः |
| पं. | भृज्जः | भृड्भ्याम् | भृड्भ्यः |
| ष. | भृज्जः | भृज्जोः | भृज्जाम् |
| स. | भृज्जि | भृज्जोः | भृट्त्सु-भृट्सु |
| सं. | हे भृट्/भृड् ! | भृज्जौ ! | भृज्जः ! |

त्यद्, तद्, यद्, एतद् यी चारै शब्दमा विभक्ति आएपछि "त्यदादीनामः"ले अत्व भएर दकारका स्थानमा अकार हुन्छ "अतो गुणे"ले पररूप हुन्छ र त्य, त, य, एत यस्ता अकारान्त शब्द बन्दछन्, यी सर्वनामसंज्ञक पनि हुन् अकारान्त सर्वनाम शब्दमा सर्व शब्दमा जस्तै प्रक्रिया भएर सर्व शब्दका जस्तै रूप हुन्छन् । त्यद्, तद्, र एतद्, शब्दका सु मा "तदो सः सावनन्त्ययोः" ले तकारको सकार हुन्छ स्यः, सः, एषः, रूप हुन्छन् । एषः यहाँ "आदेश प्रत्यययोः" ले सकारको षकार हुन्छ ।

**३०९. तदोः सः सावनन्त्ययोः ७ । २ । १०६ ॥**

त्यदादीनां तकारदकारयोरनन्त्ययोः सः स्यात्सौ । स्यः । त्यौ । त्ये ॥ सः । तौ । ते ॥ यः । यौ । ये ॥ एषः । एतौ । एते ॥

---

**तदोरिति**– त्यदादि शब्दका अन्त्यमा नरहेका तकार र दकारका स्थानमा दन्त्य सकार होस् सु पर भएमा ।

**स्यः**– त्यद् शब्ददेखि सु आयो, त्यद्का दकारका स्थानमा "त्यदादीनामः"ले अत्व, "अतोगुणे"ले पररूप भयो, 'त्यस्' भयो, "तदोः स सावन्त्ययोः"ले तकारका स्थानमा सकार भयो, 'स्यस्' भयो, रुत्व विसर्ग भयो, 'स्यः' सिद्ध भयो ।

**त्यौ**– त्यद् शब्ददेखि औ आयो, अत्व पररूप भयो, 'त्य+औ' भयो, 'त्य+औ' यहाँ वृद्धिलाई बाधेर पाएको पूर्वसवर्ण दीर्घको "नादिचि"ले निषेध भएपछि "बाधकाभावे०" लगाएर पुनः "वृद्धिरेचि"ले वृद्धि भयो, 'त्यौ' सिद्ध भयो ।

**त्ये**– त्यद् शब्ददेखि जस् आयो, 'त्यद्+अस्' भयो, अत्व पररूप भयो, 'त्य+अस्' भयो, "जसः शी"ले अस्का स्थानमा शी भयो, 'त्य+ई' यहाँ "प्रथमयोः०"ले पाएको पूर्वसवर्णदीर्घको "नादिचि"ले निषेध भएपछि "आद्गुणः"ले गुण भयो, 'त्ये' सिद्ध भयो ।

**सः**– तद् शब्ददेखि सु आयो, अत्व पररूप भयो, 'त+स्' भयो, "तदोः सः०"ले सत्व भयो, 'सस्' भयो, रुत्व, विसर्ग, भयो, 'सः' सिद्ध भयो ।

**तौ**– तद् शब्ददेखि औ आयो, अत्व, पररूप, भएपछि 'त+औ' भयो, यहाँ पूर्ववत् वृद्धि भएपछि 'तौ' यो रूप सिद्ध भयो ।

**ते**– तद् शब्ददेखि जस् आयो, अत्व पररूप भयो, 'त+अस्', "जसः शी"ले शी आदेश अनुबन्ध लोप भएपछि 'त+ई' यहाँ पूर्वसवर्णदीर्घ निषेध भएपछि पुनः गुण भयो, 'ते' सिद्ध भयो ।

**यः**– यद् शब्ददेखि सु आयो, 'यद्+स्' अत्व पररूप रुत्व, विसर्ग भयो, 'यः' सिद्ध भयो ।

**यौ**– यद् शब्ददेखि औ आयो, अत्व, पररूप, पूर्ववत् "वृद्धिरेचि"ले वृद्धि भयो, 'यौ' सिद्ध भयो ।

**ये**– यद् शब्ददेखि जस् आयो, अत्व, पररूप भयो, 'य+अस्' भयो, पूर्ववत् तद्शब्दमा झै शीआदेश भयो । गुणलाई बाधेर पूर्वसवर्णदीर्घ पाएकोमा निषेध भएपछि पुनः गुण भयो, 'ये' सिद्ध भयो ।

**एषः**- एतद् शब्ददेखि सु आयो, 'एतद्+स्' भयो, अत्व, पररूप, "तदो सः०"ले सत्व भयो, 'एसस्' भयो, "आदेशप्रत्यययोः"ले षत्व भयो, 'एषस्', रुत्व, विसर्ग भयो, 'एषः' सिद्ध भयो ।

**एतौ**– एतद् शब्ददेखि औ आयो, अत्व पररूप भयो 'एत+औ' भयो, 'एत+औ' यहाँ त्यद् शब्दमा जस्तै बाध्यबाधकभाव भएर अन्तमा वृद्धि भयो, 'एतौ' सिद्ध भयो ।

**एते**– एतद् शब्ददेखि जस् आयो, 'एतद्+अस्', अत्व, पररूप, शी आदेश पूर्ववत् त्यद् शब्दमा जस्तै बाध्यबाधकभाव भएर अन्तमा गुण भयो, 'एते' सिद्ध भयो ।

**एतम्**– एतद् शब्ददेखि अम् आयो, 'एतद्+अम्' अत्व, पररूप 'एत+अम्', "अकः सवर्णेदीर्घः" लाई बाधेर "अतो गुणे"ले पररूप पायो, त्यसलाई बाधेर "प्रथमयोः०"ले पूर्वसवर्णदीर्घ पायो, त्यसलाई बाधेर "अमि पूर्वः"ले पूर्वरूप भयो, 'एतम्' सिद्ध भयो ।

**३१०. ङेप्रथमयोरम् ७ । १ । २८ ॥**

युष्मदस्मद्भ्यां परस्य ङे इत्येतस्य प्रथमाद्वितीययोश्चामादेशः ॥

**३११. त्वाहौ सौ ७ । २ । ९४ ॥**

अनयोर्मपर्यन्तस्य त्वाहौ आदेशौ स्तः ॥

**३१२. शेषे लोपः ७ ।२ । ९० ॥**

एतयोष्टिलोपः ।

---

**तद्शब्दका रूप–**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | सः | तौ | ते | **द्वि.** | तम् | तौ | तान् |
| **तृ.** | तेन | ताभ्याम् | तैः | **च.** | तस्मै | ताभ्याम् | तेभ्यः |
| **प.** | तस्मात् | ताभ्याम् | तेभ्यः | **ष.** | तस्य | तयोः | तेषाम् |
| **स.** | तस्मिन् | तयोः | तेषु | | *(त्यदादि शब्दमा सम्बोधनका रूप हुँदैनन् ।)* | | |

**यद्शब्दका रूप–**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | यः | यौ | ये | **द्वि.** | यम् | यौ | यान् |
| **तृ.** | येन | याभ्याम् | यैः | **च.** | यस्मै | याभ्याम् | येभ्यः |
| **प.** | यस्मात् | याभ्याम् | येभ्यः | **ष.** | यस्य | ययोः | येषाम् |
| **स.** | यस्मिन् | ययोः | येषु | | *(त्यदादि शब्दमा सम्बोधनका रूप हुँदैनन् ।)* | | |

**एतद् शब्दका रूप**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | एषः | एतौ | एते | **द्वि.** | एतम् | एतौ | एतान् |
| **तृ.** | एतेन | एताभ्याम् | एतैः | **च.** | एतस्मै | एताभ्याम् | एतेभ्यः |
| **प.** | एतस्मात् | एताभ्याम् | एतेभ्यः | **ष.** | एतस्य | एतयोः | एतेषाम् |
| **स.** | एतस्मिन् | एतयोः | एतेषु | | *त्यदादिशब्दमा संबोधनका रूप हुँदैनन् ।* | | |

**अन्वादेश–** एतद् शब्दमा अन्वादेश अर्थ बुझिँदामा "द्वितीयाटौस्स्वेनः"ले एन आदेश हुन्छ, द्वितीयामा-एनम्, एनौ, एनान् र टामा एनेन, ओस्मा एनयो; यी रूप इदम् शब्दमा जस्तै हुन्छन् ।

**युष्मद्, अस्मद् शब्द–** यी दुवै शब्दका रूप सिद्ध गर्ने सूत्र यौटै छन् । अतः यी दुवै शब्दका रूप सँगसँगै साधिन्छन् ।

**ङेप्रथमयोरिति–** युष्मद् अस्मद् शब्ददेखि पर रहेका ङेका स्थानमा र प्रथमा द्वितीया विभक्तिका स्थानमा पनि अम् आदेश होस् । यो सूत्रको बाधक सूत्र "शसो न" मात्र हो ।

**त्वाहाविति–** युष्मद् अस्मद् शब्दका मपर्यन्तभागका स्थानमा क्रमैले त्व र अह आदेश होऊन् ।

**शेषे इति–** आत्व र यत्वको निमित्तदेखि भिन्न विभक्ति पर भएमा युष्मद् अस्मद् शब्दका टिको लोप होस् । पक्षान्तरमा यो सूत्रको अर्थ यस्तो छ- आत्व र यत्वका निमित्तदेखि भिन्न विभक्ति पर भएमा युष्मद् अस्मद् शब्दका अन्त्य वर्णको लोप होस् । टिको लोप गर्ने पक्षमा "अतो गुणे"ले पररूप गर्नु पर्दैन । अन्त्य वर्णको लोप गर्ने पक्षमा पररूप हुन्छ र रूप उही हुन्छ ।

त्वम् । अहम् ॥

**३१३. युवावौ द्विवचने ७ । २ । ९२ ॥**

द्वयोरुक्तावनयोर्मपर्यन्तस्य युवावौ स्तो विभक्तौ ॥

**३१४. प्रथमायाश्च द्विवचने भाषायाम् ७ । २ । ८८ ॥**

औङ्येतयोरात्वं लोके । युवाम् । आवाम् ॥

**३१५. यूयवयौ जसि ७ । २ । ९३ ॥**

अनयोर्मपर्यन्तस्य । यूयम् । वयम् ॥

---

टिलोप गरेपनि हुन्छ । अन्त्यवर्णको लोप गरेपनि हुन्छ । तर युष्मद् शब्दको लिङ्गको सम्बन्धमा पनि दुई मत छन् "अलिङ्गे युष्मदस्मदी", "सलिङ्गे युष्मदस्मदी । "किन्तु सरूपे, अलिङ्गे युष्मदस्मदी" यस पक्षमा अन्त्य वर्णको लोप गरेमा पनि टाप् हुन्न । "सलिङ्गे युष्मदस्मदी"यो पक्षमा युष्मद्स्मद् शब्दलाई सलिङ्ग मानेमा भने स्त्रीत्व बुझिँदा अन्त्य वर्णको लोप गरेपछि 'त्व+अम्' 'अह+अम्' इत्यादि स्थलमा त्व, अह इत्यादिदेखि टाप् प्रत्यय पाउँछ । सो नहोस् भनेर टिको लोप होस् भन्ने अर्थ गर्नु पर्दछ । अतः टिलोप गर्ने पक्ष नै निरन्तराय छ ।

**त्वम्, अहम्**– युष्मद् अस्मद् शब्ददेखि सु आयो, 'युष्मद्+स्', 'अस्मद्+स्' भयो, अनि "ङे प्रथमयोरम्"ले स्का स्थानमा अम् भयो, 'युष्मद्+अम्', 'अस्मद्+अम्', भयो, "त्वाहौ सौ"ले मपर्यन्तभाग युष्म्, अस्म्का स्थानमा त्व, अह, भयो । 'त्व+अद्+अम्', 'अह+अद्+अम' भयो, "अतो गुणे"ले पररूप भयो, 'त्वद्+अम्', 'अहद्+अम्', भयो, अब यहाँ आत्व, यत्वको निमित्तदेखि भिन्न विभक्ति पर छ र "शेषे लोपः"ले उभयत्र टि-अद्को लोप भयो, 'त्व्+अम्', 'अह्+अम्' भयो, वर्ण मेलन भयो, 'त्वम्' 'अहम्' सिद्ध भयो ।

**युवावविति**– युष्मद्-अस्मद् शब्दले द्वित्वसङ्ख्याविशिष्टरूप अर्थलाई कहे छँदामा युष्मद्-अस्मद् शब्दका मपर्यन्त भागका स्थानमा युव र आव आदेश क्रमैले होऊन् विभक्ति पर भएमा ।

**प्रथमाया इति**– औङ् पर भएमा युष्मद्-अस्मद् शब्दका अन्त्य अल्का स्थानमा आकार आदेश होस् लोकमा ।

**युवाम्,आवाम्**- युष्मद्-अस्मद् शब्ददेखि औ आयो, 'युष्मद्+औ' 'अस्मद्+औ' भयो, "ङेप्रथमयोरम्"ले औका स्थानमा 'अम्' भयो । 'युष्मद्+अम्', 'अस्मद्+अम्' भयो, "युवावौ द्विवचने"ले युष्मद्, अस्मद्का मपर्यन्त भाग युष्म् अस्म्का स्थानमा युव आव आदेश भयो, 'युव+अद्+अम्', 'आव+अद्+अम्' भयो, "अतो गुणे"ले पररूप भयो । 'युवद्+अम्+आवद्+अम्' भयो । "प्रथमायाश्च द्विवचने०"ले औ पर छ अम् र, युवद्, आवद्का दकारका स्थानमा आकार भयो । 'युव+आ+अम्', 'आव+आ+अम्' भयो । 'युव+आ', 'आव+आ', यहाँ "अकःसवर्णे०"ले दीर्घ भयो । 'युवा+अम्', 'आवा+अम्' भयो, यहाँ "अमि पूर्वः"ले पूर्वरूप भयो, 'युवाम्', 'आवाम्', सिद्ध भयो ।

"युवावौ द्विवचने"ले औ, औट्, तीनवटै भ्याम्, दुइवटै ओस्मा, युव आव आदेश हुन्छ । यसलाई कुनै सूत्रले बाध्दैन । यो निर्बाध सूत्र हो (१) औ र औट्मा समान रूप हुन्छन्, (२) तीन भ्याम्मा समान रूप हुन्छन् (३) दुवै ओस्मा पनि समान रूप हुन्छन् ।

**यूयवयाविति**– युष्मद्-अस्मद् शब्दका मपर्यन्त भागका स्थानमा यूय र वय आदेश क्रमैले होऊन् जस् पर भएमा ।

**यूयम्, वयम्**– युष्मद्-अस्मद् शब्ददेखि जस् आयो, 'युष्मद्+अस्', 'अस्मद्+अस्' भयो, "ङे प्रथमयोरम्"ले जस्का स्थानमा अम् भयो, 'युष्मद्+अम्', 'अस्मद्+अम्' भयो, युष्मद्, अस्मद्

**३१६. त्वमावेकवचने** ७ । २ । ९७ ॥

एकस्योक्तावनयोर्मपर्यन्तस्य त्वमौ स्तो विभक्तौ ॥

**३१७. द्वितीयायाञ्च** ७ । २ । ८७ ॥

अनयोरात्स्यात् । त्वाम् । माम् ॥

**३१८. शसो न** ७ । १ । २९ ॥

आभ्यां शसो नः स्यात् । अमोऽपवादः । "आदेः परस्य" । "संयोगान्तलोपः" । युष्मान् । अस्मान् ॥

**३१९. योऽचि** ७ । २ । ८९ ॥

अनयोर्यकारादेशः स्यादनादेशेऽजादौ परतः ।

---

शब्दका मपर्यन्त भाग-युष्म्, अस्म्का स्थानमा "यूयवयौ०"ले यूय र वय आदेश भयो, 'यूय+अद्+अम्', 'वय+अद्+अम्' भयो, "अतो गुणे०"ले पररूप भयो, 'यूयद्+अम्', 'वयद्+अम' भयो, "शेषे लोपः"ले टि (अद्) को लोप भयो, 'यूयम्' 'वयम्' सिद्ध भयो ।

**त्वमावेकेति**– युष्मद्-अस्मद् शब्दले एकत्वसंख्याविशिष्टरूप अर्थलाई कहेमा युष्मद्-अस्मद् शब्दका मपर्यन्त भागका स्थानमा त्व र म आदेश क्रमैले होऊन् विभक्ति पर भएमा ।

**द्वितीयायामिति**– युष्मद्-अस्मद् शब्दका अन्त्य अल्का स्थानमा आकार आदेश आदेश होस् द्वितीया विभक्ति पर भएमा ।

**त्वाम्, माम्**– युष्मद्-अस्मद् शब्ददेखि द्वितीयाको एकवचन अम् आयो, "समुद्रे पर्जन्यवल्लक्षणप्रवृत्तिः" लगाएर अम्का स्थानमा अम्आदेश भयो । युष्मद्-अस्मद्शब्दले एकत्वसंख्याविशिष्टरूप अर्थलाई कहेको हुँनाले युष्मद् अस्मद् शब्दको मपर्यन्त भागका स्थानमा "त्वमावेकवचने"ले त्व र म आदेश भयो, पररूप भयो, 'त्वद्+अम्' 'मद्+अम्' भयो, "द्वितीयायां च"ले त्वद्, र मद्का दकारका स्थानमा आकार भयो, 'त्व+आ+अम्', 'म+आ+अम्' भयो, 'त्व+आ', 'म+आ', यहाँ "अकः सवर्णे दीर्घः"ले दीर्घ भयो, 'त्वा+अम्+मा+अम्', भयो, "अमि पूर्वः"ले पूर्वरूप भयो, 'त्वाम्', 'माम्' सिद्ध भयो ।

**शसो नेति**– युष्मद्-अस्मद् शब्ददेखि पर रहेका शस्का स्थानमा नकार आदेश होस् । यो सूत्र "ङेप्रथमयोरम्"को अपवाद हो । "आदेःपरस्य" लगाएर अस्को अकारका स्थानमा नकार आदेश हुन्छ, अनि संयोगान्त सकारको लोप हुन्छ ।

**युष्मान्, अस्मान्**– युष्मद्-अस्मद् शब्ददेखि शस् आयो, 'युष्मद्+अस्', 'अस्मद्+अस्', भयो, अस्का स्थानमा "ङेप्रथमयोरम्"ले अम् पायो, त्यसलाई बाधेर "शसो न"ले अस्का स्थानमा 'न्' आदेश गर्दा "अलोऽन्त्यस्य" लगाएर अन्त्य अल्का स्थानमा पाएमा बाधेर "आदेः परस्य"ले परबोधक शब्दको उच्चारण गरेर परका स्थानमा विधान गरिएको हुनाले परको आदि अल् अकारका स्थानमा 'न्'आदेश भयो, 'युष्मद्+न्+स्', 'अस्मद्+न्+स्' "द्वितीयायां च"ले युष्मद्, अस्मद्का द्कारका स्थानमा आकार भयो, 'युष्म+आन्+स्' भयो, 'अस्म+आन्+स्' भयो, "अकः सवर्णे०"ले दीर्घ भयो, 'युष्मान्+स्', 'अस्मान्+स्' भयो, "संयोगान्तस्य लोपः"ले "अलोन्त्यस्य" लाएर सकारको लोप भयो, संयोगान्त-लोप असिद्ध हुनाले नकारको लोप भएन, 'युष्मान्', 'अस्मान्' सिद्ध भयो । युष्मान्का नकारका स्थानमा "अट्कुप्वाङ्०"ले पाएको णत्व "पदान्तस्य"ले निषेध हुन्छ ।

**योऽचीति**– युष्मद्-अस्मद् शब्दका अन्त्य अल्का स्थानमा यकार आदेश होस् आदेश नभएको अजादि विभक्ति पर भएमा ।

त्वया । मया ॥

**३२०. युष्मदस्मदोरनादेशे ७ । २ । ८६ ॥**

अनयोरात्स्यादनादेशे हलादौ विभक्तौ । युवाभ्याम् । आवाभ्याम् । युष्माभिः । अस्माभिः ॥

**३२१. तुभ्यमह्यौ ङयि ७ । २ । ९५ ॥**

अनयोर्मपर्यन्तस्य । टिलोपः । तुभ्यम् । मह्यम् ॥

**३२२. भ्यसोऽभ्यम् ७ । १ । ३० ॥**

आभ्यां परस्य । युष्मभ्यम् । अस्मभ्यम् ॥

**३२३. एकवचनस्य च ७ । १ । ३२ ॥**

आभ्यां ङसेरत् । त्वत् । मत् ॥

---

**त्वया, मया–** युष्मद् अस्मद् शब्ददेखि टा आयो, 'युष्मद्+आ', 'अस्मद्+आ' भयो, "त्वमावेकवचने"ले युष्मद्-अस्मद्को मपर्यन्त भागका स्थानमा त्व, म आदेश भयो, पररूप भयो, 'त्वद्+आ', 'मद्+आ' भयो, "योऽचि"ले युष्मद्, अस्मद्का दकारका स्थानमा यकार भयो, 'त्वया', 'मया' सिद्ध भयो ।

**युष्मदस्मदोरिति–** युष्मद् अस्मद् शब्दका अन्त्य अल्का स्थानमा आकार आदेश होस्, आदेश नभएको हलादि विभक्ति पर भएमा ।

**युवाभ्याम्,आवाभ्याम्–** युष्मद् अस्मद् शब्ददेखि भ्याम् आयो, 'युष्मद्+भ्याम्', 'अस्मद्+भ्याद्', भयो, "युवावौ द्विवचने"ले युष्म्, अस्म्का स्थानमा युव, आव, आदेश भयो, पररूप भयो, 'युवद्+भ्याम्', 'आवद्+भ्याम्' भयो, "युष्मदस्मदोरनादेशे"ले आदेश नभएको हलादि विभक्ति भ्याम् पर छ र युवद्को दकार, आवद्को दकारका स्थानमा आकार भयो, दीर्घ भयो, 'युवाभ्याम्' 'आवाभ्याम्' सिद्ध भयो ।

**युष्माभिः, अस्माभिः** युष्मद्-अस्मद् शब्ददेखि भिस् आयो, 'युष्मद्+भिस्' 'अस्मद्+भिस्' भयो, "युष्मदस्मदोरनादेशे"ले युष्मद्-अस्मद् शब्दका दकारको स्थानमा आकार भयो, "अकः सवर्णे दीर्घः"ले दीर्घ भयो, 'युष्माभिस्', 'अस्माभिस्' भयो, रुत्व, विसर्ग भयो, 'युष्माभिः' 'अस्माभिः' सिद्ध भयो ।

**तुभ्यंमह्यावविति–** युष्मद् अस्मद् शब्दका मपर्यन्त भागका स्थानमा तुभ्य र मह्य आदेश होऊन् ङे पर भएमा ।

**तुम्यम्, मह्यम्–** युष्मद् अस्मद् शब्ददेखि ङे आयो, 'युष्मद्+ए', 'अस्मद्+ए' भयो, 'ङे'का स्थानमा "ङेप्रथमयो रम्"ले अम् भयो, 'यष्मद्+अम', 'अस्मद्+अम' भयो । "तुभ्यमह्यौ ङयि"ले युष्म् र अस्म्का स्थानमा तुभ्य र मह्य आदेश भयो, पररूप भयो, 'तुभ्यद्+अम्', 'मह्यद्+अम' भयो, टिलोप भयो, 'तुभ्यम्', 'मह्यम्' सिद्ध भयो । युवाभ्याम्, आवाभ्याम् पूर्ववत् सिद्ध हुन्छन् ।

**भ्यस इति–** युष्मद् अस्मद् शब्ददेखि पर रहेका भ्यस्का स्थानमा अभ्यम् आदेश होस् ।

**युष्मभ्यम्, अस्मभ्यम्–** युष्मद्-अस्मद् शब्ददेखि चतुर्थीको एकवचन भ्यस् आयो, 'युष्मद्+भ्यस्', 'अस्मद्+भ्यस्' भयो, "भ्यसोऽभ्यम्"ले भ्यस्का स्थानमा अभ्यम् आदेश भयो, 'युष्मद्+अभ्यम्', 'अस्मद्+अभ्यम्' भयो । "शेषे लोपः"ले टिलोप भयो, "युष्मभ्यम्" अस्मभ्यम् सिद्ध भयो । अन्त्य वर्णको लोप गर्ने पक्षमा यस सूत्रको "भ्यसः भ्यम्" यस्तो पदच्छेद गरेर भ्यम् आदेश गरे पनि हुन्छ । अभ्यम् आदेश गर्दा पनि केही फरक पर्दैन । पररूप गरेपछि 'युष्मभ्यम्', 'अस्मभ्यम्' सिद्ध हुन्छ ।

**एकवचनस्येति–** युष्मद् अस्मद् शब्ददेखि पर रहेका ङसिका स्थानमा अत् आदेश होस् ।

**त्वत्, मत्–** युष्मद्-अस्मद् शब्ददेखि ङसि आयो, 'युप्मद्+अस्', 'अस्मद्+अस्' भयो, "एकवचनस्य च"ले ङसिका स्थानमा अत् आदेश भयो, 'युष्मद् अत्' 'अस्मद्+अत्' भयो,

**३२४. पञ्चम्या अत् ७ । १ । ३१ ॥**

आभ्यां पञ्चम्या भ्यसोऽत्स्यात् । युष्मत् । अस्मत् ॥

**३२५. तवममौ ङसि ७ । २ । ९६ ॥**

अनयोर्मपर्यन्तस्य तवममौ स्तो ङसि ॥

**३२६. युष्मदस्मद्भ्यां ङसोऽश् ७ । १ । २७ ॥**

तव । मम । युवयोः । आवयोः ॥

**३२७. साम आकम् ७ । १ । ३३ ॥**

आभ्यां परस्य साम आकं स्यात् ।

---

"त्वमावेकवचने"ले मपर्यन्त भागका स्थानमा त्व र म आदेश भयो, पररूप भयो, 'त्वद्+अत्', 'मद्+अत्' भयो, "शेषे लोपः"ले टिको लोप भयो, 'त्व्+अत्', 'म्+अत्' भयो, वर्णमेलन भयो, 'त्वत्', 'मत्' सिद्ध भयो, पञ्चमीको द्विवचन भ्याम्मा पनि 'युवाभ्याम्', 'आवाभ्याम्' पूर्ववत् सिद्ध हुन्छ ।

**पञ्चम्याइति**– युष्मद् अस्मद् शब्ददेखि पर रहेका पञ्चमीविभक्तिसम्वन्धी भ्यस्का स्थानमा अत् आदेश होस् ।

**युष्मत्, अस्मत्**- युष्मद् अस्मद् शब्ददेखि भ्यस् आयो, 'युष्मद्+भ्यस्', 'अस्मद्+भ्यस्' भयो, "पञ्चम्या अत्"ले भ्यस्का स्थानमा अत् भयो, 'युष्मद्+अत्', 'अस्मद्+अत्' भयो, "शेषे लोपः"ले टिको लोप भयो, 'युष्मत्', 'अस्मत्' सिद्ध भयो ।

**तवममाविति**– युष्मद् अस्मद् शब्दका मपर्यन्त भागका स्थानमा क्रमैले तव र मम आदेश होऊन् ङस् पर भएमा ।

**युष्मदस्मद्भ्यामिति**– युष्मद् अस्मद् शब्ददेखि पर रहेका ङस्का स्थानमा अश्आदेश होस् ।

**तव, मम**– युष्मद् अस्मद् शब्ददेखि ङस् आयो, 'युष्मद्+अस्', 'अस्मद्+अस्' भयो, "युष्मदस्मद्भ्यां ङसोऽश्"ले अश् आदेश भयो, शकारको इत्संज्ञा लोप भयो, 'अ' यो "अलोऽन्त्यस्य"ले अन्त्य अल्का स्थानमा पाएकोमा "अनेकाल् शित्सर्वस्य" लाएर अस् जम्मैका स्थानमा अ आदेश भयो, 'युष्मद्+अ', 'अस्मद्+अ' भयो, "तवममौ ङसि"ले मपर्यन्त भागका स्थानमा तव मम आदेश भयो, 'तव+अद्+अ', 'मम+अद्+अ' भयो, "अतो गुणे"ले पररूप भयो, 'तवद्+अ', 'ममद्+अ', 'शेषे लोपः'ले टिलोप भयो, 'तव', 'मम', सिद्ध भयो ।

**युवयोः, आवयोः**- युष्मद् अस्मद् शब्ददेखि ओस् आयो, 'युष्मद्+ओस्', 'अस्मद्+ओस्' भयो, "युवावौ द्विवचने"ले मपर्यन्त भागका स्थानमा युव आव आदेश भयो, पररूप भयो, 'युवद्+ओस्', 'आवद्+ओस्' भयो, "योऽचि"ले दकारका स्थानमा यकार भयो, 'युवय्+ओस्-'युवयोस्', 'आवय्+ओस्'-'आवयोस्' भयोः, रुत्व, विसर्ग भयो, 'युवयोः', 'आवयोः', सिद्ध भयो ।

**सामेति**– युष्मद् अस्मद् शब्ददेखि पर रहेका साम्का (भावी सुट् सहित आम्का) स्थानमा आकम् आदेश होस् ।

**"शेषे लोपः"** यो सूत्रको अर्थ गर्दा दुई पक्ष छन् एकपक्ष युष्मद्, अस्मद्को "टि (अद्) को लोप होस्" भन्ने र अर्को पक्ष "अन्त्य वर्णको लोप होस्" भन्ने । अन्त्यवर्णको लोप गर्ने कुराको चर्चामाथि पनि गरिएको छ । यो पक्षमा, द्कारको लोप भएपछि, युष्म, अस्म यो अवर्णान्त बन्दछ र "आमि सर्वनाम्नः सुट्"ले सुट् पाउने हुन्छ । सो सुट् नहोस् भन्नको निमित्त सामः-भावी सुट्सहित आम्का स्थानमा भनिएको हो । टिको लोप गर्ने पक्षमा युष्म् अस्म् बाँकी रहन्छ सुट् पाउँदैन, अतः सामः भन्नु पर्दैन । यस्तै "भ्यसोऽभ्यम्" मा अभ्यम् आदेश पनि टिलोप पक्षलाई लिएर हो । अन्त्य वर्णको

युष्माकम् । अस्माकम् । त्वयि । मयि । युवयोः । आवयोः । युष्मासु । अस्मासु ॥

**३२८. युष्मदस्मदोः षष्ठीचतुर्थीद्वितीयास्थयोर्वान्नावौ** ८ । १ । २० ॥

पदात्परयोरपादादौ स्थितयोः षष्ठतिविशिष्टयोर्वां नौ इत्यादेशौ स्तः ॥

**३२९. बहुवचनस्य बस्नसौ** ८ । १ । २१ ॥

उक्तविधयोरनयोः षष्ठयादिबहुवचनान्तयोर्वस्नसौ स्तः ॥

**३३०. तेमयावेकवचनस्य** ८ । १ । २२ ॥

उक्तविधयोरनयोषष्ठीचतुर्थ्येकवचनान्तयोस्ते मे एतौ स्तः॥

**३३१. त्वामौ द्वितीयायाः** ८ । १ । २३ ॥

द्वितीयैकवचनान्तयोरनयोस्त्वा मा इत्यादेशौ स्तः ॥

---

लोप गर्ने पक्षमा भ्यम् आदेश गरे पनि रूप सिद्धि हुन्छ भन्ने कुरा त्यहाँ पनि भनिएको छ ।

**युष्माकम्, अस्माकम्**– युष्मद् अस्मद् शब्ददेखि आम् आयो, 'युष्मद्+आम्', 'अस्मद्+आम्' भयो, "साम आकम्"ले युष्मद् अस्मद् शब्ददेखि पर रहेका साम्का स्थानमा आकम् आदेश भनेको हुनाले यहाँ साम् छैन, आकम् आदेश पाएन नपाएमा "अन्त्यवर्णलोप पक्षे भाविनः सुटो निवृत्यर्थ ससुट्कनिर्देशः" अन्त्यवर्ण लोप गर्ने पक्षमा भावी सुट् नहोस् भन्ने हेतुले सुट्सहित निर्देश गरेको हो भनेकोले साम् छ आम् र आम्का स्थानमा आकम् भयो, 'युष्मद्+आकम्', 'अस्मद्+आकम्' भयो, टिलोप भयो, 'युष्माकम्', 'अस्माकम्', सिद्ध भयो । अन्त्यवर्ण लोप गर्ने पक्षमा अन्त्यवर्ण लोप भएपछि 'युष्म+आकम्', 'अस्म+आकम्' भएपछि आम्मा रहेको आम्त्व धर्म "स्थानिवदादेशो" लाएर आकम्मा आयो र आकम्को "आमि सर्वनाम्नः"ले सुट् पाएमा "भाविनः सुटो निवृत्यर्थम्" भनेकोले सुट्को निवृत्ति भयो, "अकः सवर्णे दीर्घः"ले दीर्घ भयो, 'युष्माकम्', 'अस्माकम्' सिद्ध भयो ।

**त्वयि मयि**– युष्मद् अस्मद् शब्ददेखि ङि आयो, 'युष्मद्+इ', 'अस्मद्+इ' भयो, "त्वमावेक वचने" मपर्यन्त भागका स्थानमा त्व, र, म आदेश भयो, 'त्व+अद्+इ', 'म+अद्+इ' भयो, पररूप भयो, 'त्वद्+इ', 'मद्+इ'भयो, "योऽचि"ले दकारका स्थानमा यकार भयो, 'त्वयि', 'मयि' सिद्ध भयो । ओस्मा 'युवयोः', 'आवयोः' पूर्ववत् सिद्ध हुन्छ ।

**युष्मासु,अस्मासु**– युष्मद् अस्मद् शब्ददेखि सुप् आयो, 'युष्मद्+सुप्', 'अस्मद्+सुप्' भयो, "युष्मदस्मदोरनादेशे"ले युष्मद् अस्मद्का दकारका स्थानमा आकार भयो, 'युष्म+आ+सु' 'अस्म+आ+सु', "अक सवर्णे दीर्घः"ले दीर्घ भयो, 'युष्मासु', 'अस्मासु' सिद्ध भयो ।

**युष्मदस्मदोरिति**– पददेखि पर रहेका पाउका आदिमा नरहेका षष्ठी चतुर्थी र द्वितीयाले विशिष्ट युष्मद् अस्मद् शब्दका स्थानमा वाम्, नौ, यी आदेश क्रमैले होऊन् ।

**बहुवचनस्येति**– पददेखि पर रहेका पाउका आदिमा नरहेका षष्ठी चतुर्थी र द्वितीयाको बहुवचन अन्तमा हुने युष्मद् अस्मद् शब्दका स्थानमा वस्आदेश र नस्आदेश क्रमैले होऊन् ।

**तेमयाविति**– पददेखि पर रहेका पाउका आदिमा नरहेका षष्ठी र चतुर्थीको एकवचन अन्तमा हुने युष्मद् अस्मद् शब्दका स्थानमा 'ते' 'मे' यी आदेश क्रमैले होऊन् ।

**त्वामाविति**– पददेखि पर रहेका पाउका आदिमा नरहेका द्वितीयाको एकवचन अन्तमा हुने युष्मद् अस्मद् शब्दका स्थानमा 'त्वा' र 'मा' आदेश क्रमैले होऊन् । यी सूत्रहरुले वाम्, नौ, वस्, नस्, ते, मे, आदेश भएको उदाहरण स्वरूप दुई पद्य तल दिइन्छ-

श्रीशस्त्वाऽवतु मापीह दत्तात्ते मेऽपि शर्म सः ।
स्वामी ते मेऽपि स हरि पातु वामपि नौ विभुः ॥

---

श्रीशस्त्वाऽवतु माऽपीह दत्तात्ते मेऽपि शर्म सः ।
स्वामी ते मेऽपि स हरिः पातु वामपि नौ विभुः ॥
सुखं वान्नौ ददात्वीशः पतिर्वामपि नौ हरिः ।
सोऽव्याद्वो नः शिवं वो नो दद्यात् सेव्योऽत्र वः स नः ॥

---

सुखं वान्नौ ददात्वीशः पतिर्वामपि नौ हरिः ।
सोऽव्याद् वो नः शिवं वो नो दद्यात् सेव्योऽत्र वः स नः ॥

यहाँ २ पद्य छन्, यी अनुष्टुप् छन्दका पद्य हुन् । एक पद्यमा चार पाउ हुन्छन् । प्रत्येक पाउँमा आठ आठ अक्षर हुन्छन् ।

पहिलो पद्यमा
'श्रीशस्त्वाऽवतु माऽपीह,' यो पहिलो पाउ हो ।
'दत्तात्ते मेऽपि शर्म सः', यो दोस्रो पाउ हो ।
'स्वामी ते मेऽपि स हरिः' यो तेस्रो पाउ हो ।
'पातु वामपि नौ विभुः' यो चौथो पाउ हो ।
दोस्रो पद्यमा–
'सुखं वान्नौ ददात्वीशः,' यो पहिलो पाउ हो ।
'पतिर्वामपि नौ हरिः,' यो दोस्रो पाउ हो ।
'सोऽव्याद् वोनः शिवं वो नो,' यो तेस्रो पाउ हो ।
'दद्यात्सेव्योऽत्र वः स नः,' यो चौथो पाउ हो ।

पहिलो श्लोकको पहिलो पाउमा "श्रीशः त्वाम् अवतु माम् अपीह", यस्तो थियो, यहाँ 'त्वाम्', 'माम्' यी दुई पद 'श्रीशः' एवं 'अवतु' यी दुई पद देखि पर रहेका छन् । पाउको आदिमा पनि छैनन्, द्वितीयाको एक वचन विशिष्ट छन् र "युष्मदस्मदोः षष्ठीचतुर्थीद्वितीयास्थयोः०"ले वाम् र नौ आदेश पायो, त्यसलाई बाधेर "त्वामौ द्वितीयायाः"ले त्वाम्का स्थानमा 'त्वा' र माम्का स्थानमा 'मा' आदेश भयो, सन्धि भयो, 'श्रीशस्त्वाऽवतु मापीह' सिद्ध भयो ।

दोस्रो पाउमा 'दत्तात् तुभ्यम् मह्यम् अपि शर्म सः' यस्तो थियो यहाँ "युष्मदस्मदोः षष्ठी०"ले 'तुम्यम्', 'मह्यम्' यी दुई पद, दत्तात्, तुभ्यम् यी पददेखि पर रहेका र पाउका आदिमा पनि नहुनाले र चतुर्थीको एकवचनान्त 'तुभ्यम्', 'मह्यम्'का स्थानमा वाम् नौ आदेश पाएकोमा "ते मयावेकवचनस्य"ले 'तुभ्यम्'का स्थानमा 'ते'आदेश र 'मह्यम्'का स्थानमा 'मे'आदेश भयो, सन्धि भयो, 'दत्तात्तेमेऽपि शर्म सः' भयो ।

तेस्रो चरणमा "स्वामी तव मम अपि स हरिः" यस्तो थियो, यहाँ पददेखि पर रहेको पाउको आदिमा नरहेको षष्ठीको एकवचनान्त युस्मद् अस्मद् शब्द 'तव', 'मम'का स्थानमा "युष्मदस्मदोः षष्ठी चतुर्थी०"ले वाम् नौ आदेश पाएकोमा बाधेर "तेमयावेक०"ले ते मे आदेश भयो, सन्धि भयो, 'स्वामी ते मेऽपि स हरिः' यस्तो सिद्ध भयो ।

चौथो चरणमा 'पातु युवामपि आवां विभुः' यस्तो स्थितिमा "युष्मदस्मदोः षष्ठीचतुर्थीद्वितीया०"ले पातु र अपि पददेखि पर रहेका पाउका आदिमा नरहेको द्वितीया विभक्ति विशिष्ट युष्मद् शब्द 'युवाम्' र अस्मद् शब्द आवाम्का स्थानमा 'वाम्' र 'नौ'आदेश भयो, 'पातु वामपि नौ विभुः' सिद्ध भयो ।

**वा.** (एकवाक्ये युष्मदस्मदादेशा वक्तव्याः)। एकतिङ् वाक्यम्।

दोस्रो श्लोकको पहिलो पाउमा- 'सुखं युवाभ्यां आवाभ्यां ददात्वीशः' यस्तो स्थितिमा पददेखि पर रहेका पाउका आदिमा नरहेका चतुर्थीविभक्तिविशिष्ट युष्मद् अस्मद् शब्द 'युवाभ्याम्' र 'आवाभ्याम्'का स्थानमा "युष्मदस्मदोः षष्ठी०"ले 'वाम्' र 'नौ'आदेश क्रमैले भयो, सन्धि भयो। 'सुखं वान्नौ ददात्वीशः' सिद्ध भयो।

दोस्रो पाउमा- 'पतिर् युवयोः, आवयोः, अपि स हरिः' यस्तो स्थितिमा पददेखि पर रहेको र पाउका आदिमा नरहेका षष्ठीविभक्तिविशिष्ट युष्मद् अस्मद् शब्द- 'युवयोः', 'आवयोः' यी दुईका स्थानमा "युष्मदस्मदोः षष्ठी चतुर्थी०" यस सूत्रले क्रमैले 'वाम्' र 'नौ'आदेश भयो, सन्धि भयो, 'पतिर्वामपि नौ हरिः' सिद्ध भयो।

तेस्रो पाउको पूर्वार्द्धमा 'सस् अव्यात् युष्मान् अस्मान्' यस्तो स्थितिमा पददेखि पर रहेका र पाउका आदिमा नरहेका द्वितीयाविभक्तिविशिष्ट युष्मद् अष्मद् शब्द 'युष्मान्' 'अस्मान्'का स्थानमा "युष्मद्स्मदोः षष्ठीचतुर्थीद्वितीयास्थयोः०"ले 'वाम्' 'नौ'आदेश पाएकोमा बाधेर "बहुवचनस्य वस्नसौ"ले वस् र नस् आदेश क्रमैले भयो, सन्धि कार्य भयो, 'सोऽव्याद् वोनः' सिद्ध भयो।

तेस्रो पाउको उत्तरार्ध र चुतर्थ चरणको आद्यभागमा रहेका दद्यात् यो क्रियापद सहित "शिवम् युष्मभ्यम् अस्मभ्यम् दद्यात्" यस्तो स्थितिमा चतुर्थीविभक्तिविशिष्ट युष्मद् अस्मद् यी दुईशब्द 'युष्मभ्यम्', 'अस्मभ्यम्' पददेखि पर रहेका र पाउका आदिमा नरहेका हुनाले "युष्मदस्मदोः०"ले पाएको वाम् नौ आदेशलाई बाधेर "बहुवचनस्य वस्नसौ"ले वस् 'नस्' आदेश क्रमैले भयो, सन्धिकार्य भयो, 'शिवं वो नो द्द्यात्' सिद्ध भयो।

चतुर्थ चरणको अन्तमा 'सेव्योऽत्र युष्माकम् सस् अस्माकम्' यस्तो स्थितिमा पददेखि पर रहेका पाउका आदिमा नरहेको षष्ठीविभक्तिविशिष्ट युष्मद् अस्मद् शब्द युष्माकम् अस्माकम्का स्थानमा "युष्मदस्मदोः षष्ठी०"लाई बाधेर "बहुवचनस्य०"ले वस् नस् आदेश क्रमैले भयो, सन्धि कार्य भयो, 'सेव्योऽत्र वः स नः' सिद्ध भयो।

**यस पद्यको अन्वय र अर्थ-**

इह श्रीशः, त्वा, अवतु, मा अपि (यहाँ लक्ष्मीका पति विष्णु भगवान्ले तिमीलाई र मलाई पनि रक्षा गरून्।)

स, ते, मे, अपि, शर्म, दत्तात् (ती विष्णु भगवान्ले तिमीलाई र मलाई पनि कल्याण दिऊन्।)

स, हरिः, ते, मे, अपि स्वामी (ती विष्णु तिम्रा र मेरा पनि स्वामी हुन्।)

विभुः, वां, नौ, अपि, पातु (व्यापक विष्णुले तिमी दुई र हामी दुईलाई रक्षा गरून्।)

ईशः, वां, नौ, सुखं, ददातु (ईश्वर विष्णुले तिमी दुई र हामी दुईलाई सुख दिउन्।)

हरिः, वां, नौ, अपि, पतिः (विष्णु तिमी दुईका र हामी दुईका रक्षकहुन्।)

सः, वः नः अव्यात् (ती विष्णुले तिमीहरू र हामीहरूलाई रक्षा गरून्।)

वः नः, शिवं, दद्यात् (तिमीहरूलाई र हामीहरूलाई कल्याण दिऊन्।)

अत्र, सः, वः, नः, सेव्य (यहाँ ती विष्णु तिमीहरूका र हामीहरूका सेव्य छन्।)

**(वा.) एकवाक्य इति**- युष्मद् अस्मद् शब्दका स्थानमा हुने आदेश एकवाक्यमा होऊन् भन्नु।

**एकतिङिति**- एकतिङन्तपदघटित पदसमुदायलाई वाक्य भनिन्छ।

त्यसकारणले यहाँ हुँदैन 'ओदनं पच तव, भविष्यति' (भात पकाउ तिम्रो हुनेछ) यहाँ 'तव'का स्थानमा "युष्मदस्मदोः०"ले 'वाम्', 'नौ' आदेश पाएकोमा बाधेर "तेमयावेक०"ले

ओदनंपच तव भविष्यति इह तु स्यादेव, शालीनां ते ओदनं दास्यामि । **वा.** (एते वान्नावादयोऽनन्वादेशे वा वक्तव्याः) । अन्वादेशे तु नित्यं स्युः । (अनन्वादेशे-) धाता ते भक्तोऽस्ति, धाता तव भक्तोऽस्ति वा । (अन्वादेशे-) तस्मै ते नम इत्येव ॥

---

'ते'आदेश पाएको थियो, प्रकृत वार्तिक "एकवाक्ये युष्मदस्मदादेशाः०"ले युष्मद् अस्मद् शब्दका स्थानमा हुने आदेश एकवाक्यमा मात्र हुन्छन् भनेकोले एकतिङन्तपदघटित पदसमुदायलाई एकवाक्य भनिने हुँदा यहाँ 'पच' र 'भविष्यति' यी दुई तिङन्त पद भएकोले दुई वाक्य भए दुई वाक्य भएपछि पच यो पद देखि पर दोस्रो वाक्यको आदिमा रहेको तवका स्थानमा ते आदेश भएन 'ओदनं पच तव भविष्यति' यस्तै रह्यो । बोद्धव्य– यहाँ "पदात्" ८।१।१७ यस सूत्रको अनुवृत्ति (अधिकार) छ । अतः पददेखि पर रहेको युष्मद् अस्मद् शब्द हुनुपर्छ । दोस्रो वाक्यको आदिमा हुनाले पद देखि पर भएन प्रथमवाक्यान्त 'पच' यो पददेखि पर थियो तर "एकवाक्ये०" यस वार्तिकका नियमले निषेध भयो र यथावत् रह्यो ।

**इहत्विति–** यहाँ त हुन्छ नै । 'शालीनां ते ओदनं दास्यामि' (शालीधानको भात तिमीलाई दिनेछु) । 'शालीनां तव ओदनं दास्यामि' यहाँ दास्यामि यो एकतिङन्त पदघटित पदसमुदाय हुनाले यौटै वाक्य छ र 'शालीनां' यो पददेखि पर रहेको पाउका आदिमा नरहेको षष्ठीको एकवचनान्त युष्मद् शब्द तवका स्थानमा "युष्मदस्मदोः०"लाई बाधेर "तेमयावेकवचनस्य"ले ते आदेश भयो, 'शालीनां ते ओदनं दास्यामि' सिद्ध भयो ।

**(वा.) एते वान्नेति–** यी पूर्वोक्त वाम् नौ आदि आदेश अन्वादेश अर्थ नबुझिँदामा विकल्पले हुन्छन् ।

**अन्वादेशेत्विति–** अन्वादेश अर्थमा त नित्य हुन्छन् ।

'धाता ते भक्तोस्ति', 'तव भक्तोऽस्ति वा' (ब्रह्माजी तिम्रा भक्त छन्) 'धाता तव भक्तोऽस्ति' यहाँ पद-धातादेखि पर रहेको पाउका आदिमा नरहेको षष्ठीको एकवचनान्त युष्मद् शब्द तवका स्थानमा पूर्ववत् "तेमयावेक०"ले नित्य ते आदेश पाएकोमा "एते वान्नावादयः०"ले विकल्पले ते आदेश भयो, 'धाता ते भक्तोऽस्ति' ते आदेश नभएमा 'धाता तव भक्तोऽस्ति' यी दुई रूप भए ।

'धाता ते-तव भक्तोऽस्ति, तस्मै तुभ्यं नमः' यस्तो स्थितिमा धाता ते-तव भक्तोऽस्ति (ब्रह्माजी तिम्रा भक्त छन्) भन्दा एकपटक युष्मद् शब्दको प्रयोग भैसकेको छ । तस्मै तुभ्यं नमः (त्यस्ता तिमीलाई नमस्कार छ) भन्दा तुभ्यम् यहाँ पुनः युष्मद् शब्दको प्रयोग भयो र "अन्वादेशे तु नित्यं स्युः" अन्वादेश अर्थमा नित्य 'वाम्, 'नौ' आदि आदेश हुन्छन् भनेकोले तुभ्यम्का स्थानमा ते आदेश नित्य भयो, 'धाता ते-तव भक्तोऽस्ति, तस्मै ते नमः' सिद्ध भयो । यहाँ दोस्रो वाक्यमा 'तस्मै ते नमः' यो मात्र हुन्छ, 'तस्मै तुभ्यं नमः'हुँदैन । उक्तस्य पुनः कथनमन्वादेशः- यसको व्याख्या इदम् शब्दमा भैसकेको छ ।

**युष्मद् अस्मद् शब्दका रूपहरू-**

| वि. | एकवचन | | द्विवचन | | बहुवचन | |
|---|---|---|---|---|---|---|
| प्र. | त्वम्, | अहम्, | युवाम्, | आवाम्, | यूयम्, | वयम्, |
| द्वि. | त्वाम्, | माम्, | युवाम्, | आवाम्, | युष्मान्, | अस्मान्, |
| | (त्वा) | (मा) | (वाम्) | (नौ) | वः) | (नः) |
| तृ. | त्वया, | मया, | युवाभ्याम, | आवाभ्याम् | युष्माभिः | अस्माभिः |
| च. | तुभ्यम्, | मह्यम् | युवाभ्याम, | आवाभ्याम्, | युष्मभ्यम्, | अस्मभ्यम् |

सुपात्, सुपाद् । सुपादौ ॥

**३३२. पादः पत् ६ । ४ । १३० ॥**

पाच्छब्दान्तं यदङ्गं भं तदवयवस्य पाच्छब्दस्य पदादेशः ॥ सुपदः । सुपदा । सुपाद्भ्याम् ॥

---

| | | | | | | |
|---|---|---|---|---|---|---|
| | (ते) | (मे) | (वाम्), | (नौ) | (वः) | (नः) |
| प. | त्वत्, | मत्, | युवाभ्याम्, | आवाभ्याम्, | युष्मत्, | अस्मत्, |
| ष. | तव, | मम, | युवयोः, | आवयोः | युष्माकम्, | अस्माकम् |
| | (ते), | (मे) | (वाम्), | (नौ) | (वः), | (नः) |
| स. | त्वयि, | मयि | युवयोः | आवयोः, | युष्मासु, | अस्मासु |

**सुपाद् (राम्रा पाउ हुने व्यक्ति)**

**सुपात्/द्**- सुपाद् शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'सुपाद्+स्' भयो, "हलुङ्याब्भ्यो०"ले सुको लोप भयो, सुपाद्का दकारका स्थानमा "वाऽवसाने"ले चर्त्व भयो, 'सुपात्' चर्त्व नभएका पक्षमा 'सुपाद्' यी दुई रूप सिद्ध भए ।

**सुपादौ**– सुपाद् शब्ददेखि औ आयो, वर्णमेलन भयो, 'सुपादौ' सिद्ध भयो । जस्मा रुत्व, विसर्ग भयो, 'सुपादः' सिद्ध भयो, अम्, औट्मा पनि वर्णमेलन मात्र भयो, 'सुपादम्', 'सुपादौ' सिद्ध भयो ।

**पाद इति**– पाद् शब्द अन्तमा हुने जो भसंज्ञक अङ्ग छ त्यसको अवयव पाद् शब्दका स्थानमा पद् आदेश होस् ।

यो सूत्रको वृत्ति लेख्दा वृत्तिकारले "अलोऽन्त्यस्य", "अनेकाल् शित्सर्वस्य" "निर्दिश्यमानस्यादेशा भवन्ति" यी सब नियम लगाएर वृत्ति लेखेका छन् । अतः कुनै परिभाषा सूत्र लगाउनु पर्दैन ।

**सुपदः**- सुपाद् शब्ददेखि शस् आयो, 'सुपाद्+अस्' भयो, भसंज्ञा भयो, "पादः पत्"ले पाद् शब्द अन्तमा हुने भसंज्ञक अङ्ग सुपाद्को अवयव पाद्का स्थानमा पद् आदेश भयो । 'सुपद्+अस्' भयो रुत्व, विसर्ग भयो, 'सुपदः' सिद्ध भयो ।

**सुपदा**- सुपाद् शब्ददेखि टा आयो, 'सुपाद्+आ' भयो, भसंज्ञा भयो, "पादः पत्"ले सुपाद्को अवयव पाद्का स्थानमा पद् आदेश भयो, 'सुपदा' सिद्ध भयो ।

यस्तै प्रकारले शस् आदि अजादि विभक्तिमा भसंज्ञा हुन्छ पाद्का स्थानमा पद् आदेश हुन्छ । हलादि विभक्तिमा पद् आदेश हुँदैन । अरू विशेष कार्य छैन ।

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | सुपात्/द् | सुपादौ | सुपादः | **द्वि.** | सुपादम् | सुपादौ | सुपदः |
| **तृ.** | सुपदा | सुपाद्भ्याम् | सुपाद्भिः | **च.** | सुपदे | सुपाद्भ्याम् | सुपाद्भ्यः |
| **प.** | सुपदः | सुपाद्भ्याम् | सुपाद्भ्यः | **ष.** | सुपदः | सुपदोः | सुपदाम् |
| **स.** | सुपदि | सुपदोः | सुपात्सु | **सं.** | हे सुपात्/द् ! | सुपादौ ! | सुपादः ! |

**थकारान्तशब्द**- अग्निमथ् (मथन गरेर आगो निकाल्ने मानिस)

**अग्निमत्/द्**- अग्निमथ् शब्ददेखि सु आयो, 'अग्निमथ्+स्' भयो, "हल् ङ्याब्भ्यो०"ले अत्

अग्निमत्, अग्निमद् अग्निमथौ । अग्निमथः ॥

**३३३. अनिदितां हल उपधायाः क्ङिति ६ । ४ । २४ ॥**

हलन्तानामनिदितामङ्गानामुपधाया नस्य लोपः किति ङिति । नुम् । संयोगान्तलोपः । नस्य कुत्वेन ङः । प्राङ् ।

---

सकारको लोप भयो, "झलां जशोऽन्ते"ले जश्त्व भएर थकारका स्थानमा दकार भयो, "वाऽवसाने"ले वैकल्पिक चर्त्व भयो, 'अग्निमत्', चर्त्व नभएका पक्षमा 'अग्निमद्' यी दुई रूप सिद्ध भए ।

**अग्निमथौ-** अग्निमथ् शब्ददेखि औ आयो, वर्णमेलन भयो, 'अग्निमथौ' सिद्ध भयो ।

**अग्निमथः-** अग्निमथ् शब्ददेखि जस् आयो, 'अग्निमथ्+अस्' भयो, वर्णमेलन भयो, रुत्व, विसर्ग भयो, 'अग्निमथः' सिद्ध भयो । यस्तै प्रकारले अजादि विभक्ति पर भएमा अरू विशेष कार्य छैन । हलादि विभक्ति पर भएमा पदसंज्ञा भएपछि "झलां जशोऽन्ते"ले जश्त्व भएर थकारको दकार हुन्छ । सुप्मा जश्त्व भएपछि दकारको "खरि च"ले चर्त्व हुन्छ ।

**रूप तालिका-**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र. | अग्निमत्/अग्निमद्, | अग्निमथौ | अग्निमथः |
| द्वि. | अग्निमथम् | अग्निमथौ | अग्निमथः |
| तृ. | अग्निमथा | अग्निमद्भ्याम् | अग्निमद्भिः |
| च. | अग्निमथे | अग्निमद्भ्याम् | अग्निमद्भ्यः |
| प. | अग्निमथः | अग्निमद्भ्याम् | अग्निमद्भ्यः |
| ष. | अग्निमथः | अग्निमथोः | अग्निमथाम् |
| स. | अग्निमथि | अग्निमथोः | अग्निमत्सु |
| सं. | हे अग्निमत्/हे. अग्निमद् ! | हे अग्निमथौ ! | हे अग्निमथः ! |

**अनिदितामिति-** हल् अन्तमा हुने ह्रस्व इकारको इत्संज्ञा नहुने अङ्गका उपधाका नकारको लोप होस् कित् र ङित् प्रत्यय पर भएमा ।

**चकारान्त शब्द-** प्र अच् (पूर्वको दिशा, देश, काल) ।

**प्र** पूर्वमा हुने अञ्च् धातुदेखि "ऋत्विग्दधृक्स्रग्दिगुष्णिगञ्चुयुजिकुञ्चां च"ले क्विन् प्रत्यय भयो, सर्वापहारी लोप भयो प्र अञ्च् भयो । प्र.+अञ्च् यहाँ हलन्त, ह्रस्व इकारको इत्संज्ञा नहुने अङ्ग छ, प्र अञ्च् त्यसदेखि पर कित् प्रत्यय "प्रत्ययलोपे०" लगाएर क्विन्को 'व्' छ, र "अनिदितां हल उपधाया०" यो सूत्रले उपधाका नकारको र लोप भयो, 'प्र.+अच्' शब्द बन्यो । प्र अञ्च् यहाँ उपधाको ञकारलाई "अनिदितां०" यो सूत्रले अनुस्वार परसवर्ण असिद्ध मानेर नकार नै देख्छ र ञकारको लोप गर्दछ र प्र अच् शब्द बन्दछ ।

**प्राङ्** - प्र.+अच् शब्ददेखि सु आयो, 'प्र.+अच्+स्' भयो, "उगिदचां सर्वनामस्थाने"ले नुम् भयो, 'प्रअन्च्+स्' नकारको अनुस्वार पर सवर्ण पाएमा "अकृतव्यूहाः पाणिनीयाः । निमित्तं विनाशोन्मुखं दृष्टा तत्प्रयुक्तं कार्यं न कुर्वन्ति" पाणिनीय विद्यार्थीहरू केही काम गर्नुभन्दा पहिले विशेष ऊह गर्छन् । निमित्त नाशोन्मुख छ भने त्यसलाई निमित्त मानेर हुने कार्य गर्दैनन् भनेकोले यहाँ द्वितीय क्षणमा नाश हुन लागेका चकारलाई निमित्त मानेर अनुस्वार परसवर्ण भएन । 'प्र अन्च्+स्' यहाँ सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, 'प्र.+अन्च्' भयो, चकारको

प्राञ्चौ । प्राञ्चः ॥

**३३४. अचः ६ । ४ । १३८ ॥**

लुप्तनकारस्याञ्चतेर्भस्याकारस्य लोपः ॥

**३३५. चौ ६ । ३ । १३८ ॥**

लुप्ताकारनकारेऽञ्चतौ परे पूर्वस्याणो दीर्घः । प्राचः । प्राचा । प्राग्भ्याम् ॥

---

संयोगान्तलोप भयो, 'प्र.+अन्' भयो, दीर्घ भयो, 'प्रान्' भयो । नकारका स्थानमा "क्विन्प्रत्ययस्य कुः"ले कुत्व हुँदा स्थान अर्थ र आभ्यन्तर प्रयत्नबाट नियम भएन । बाह्यप्रयत्नमा जाँदा संवार, नाद, घोष अल्पप्राण प्रयत्नवाला नकारका स्थानमा तादृश ग, ङ दुबै पाएमा अनुनासिक नकारका स्थानमा अनुनासिक ङकार भयो, 'प्राङ्' सिद्ध भयो ।

**प्राञ्चौ-** प्र अच् शब्ददेखि औ आयो, 'प्र.+अच्+औ' भयो, "उगिदचां०"ले नुम् भयो, 'प्र.+अन्च्+औ', नकारको अनुस्वार परसवर्ण भयो, वर्णसम्मेलन भयो, 'प्राञ्चौ' सिद्ध भयो ।

**प्राञ्चः-** प्र अच् शब्ददेखि जस् आयो, 'प्र+अच्+अस्' भयो, "उगदिचां०"ले नुम् भयो, अनुस्वार परसवर्ण भयो, 'प्र+अञ्च्+अस्' भयो, "अकः सवर्णे०"ले दीर्घ भयो, वर्णमेलन भयो, 'प्राञ्चस्', रुत्व, विसर्ग भयो, 'प्राञ्चः' सिद्ध भयो । यस्तै प्रकारले अम् र औटमा पनि 'प्राञ्चम्' 'प्राञ्चौ' हुन्छ ।

**अच इति-** नकारको लोप भएका भसंज्ञक अञ्चधातुका अकारको लोप होस् ।

**चाविति-** अकार र नकारको लोप भएको अञ्च धातु पर भएमा पूर्वका अण्का स्थानमा दीर्घ होस् ।

**प्राचः-** प्र अच् शब्ददेखि शस् आयो, 'प्र+अच्+अस्' भयो, सर्वनामस्थान पर नहुनाले "उगिदचां०"ले नुम् भएन, भसंज्ञा भयो "अचः"ले अकारको लोप भयो, 'प्र च्+अस्' भयो । अब अकारको र नकारको लोप भएको अञ्च् धातु 'च्' पर छ र पूर्वको 'अण्+प्र' का अकारका स्थानमा "चौ"ले दीर्घ आकार भयो, 'प्राच्+अस्' भयो, वर्ण मेलन र रुत्व, विसर्ग, भयो, 'प्राचः' सिद्ध भयो ।

**प्राचा-** प्र अच् शब्ददेखि टा आयो, 'प्र+अच्+आ' भयो, भसंज्ञा भयो, "अचः"ले अच्का अकारको लोप भयो, "चौ" ले 'प्र+का' अकारका स्थानमा दीर्घ भयो, चकार आ मा लाग्यो, 'प्राचा' सिद्ध भयो ।

**प्राग्भ्याम्-** प्र अच् शब्ददेखि भ्याम् आयो, 'प्र+अच्+भ्याम्' भयो, "अकः सवर्णे०"ले दीर्घ भयो, 'प्राच्+भ्याम्' भयो, प्राच्लाई पदसंज्ञा भयो, "क्विन्प्रत्ययस्य०"लाई बाधेर "चोः कुः"ले कुत्व भयो, जश्त्व भयो, 'प्राग्भ्याम्' यो रूप सिद्ध भयो ।

यस्तै प्रकारले शस्मा र टा मा जस्तै अरू ङे,ङस्, आदि अजादि विभक्तिमा पनि भसंज्ञा भएर "अचः"ले अकारको लोप भएपछि "चौ"ले प्रका अकारका स्थानमा दीर्घ आकार हुन्छ । हलादि विभक्तिमा 'प्र+अच्'मा "अकः सवर्णे दीर्घः"ले दीर्घ हुन्छ र "क्विन्प्रत्ययस्य कुः"लाई बाधेर "चोः कुः"ले कुत्व हुन्छ । सुप्मा कुत्व, षत्व, क्षत्व भएर 'प्राक्षु' हुन्छ ।

**प्र अच् शब्दका रूप-**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | प्राङ् | प्राञ्चौ | प्राञ्चः | **द्वि.** | प्राञ्चम् | प्राञ्चौ | प्राचः |
| **तृ.** | प्राचा | प्राग्भ्याम् | प्राग्भिः | **च.** | प्राचे | प्राग्भ्याम् | प्राग्भ्यः |
| **प.** | प्राचः | प्राग्भ्याम् | प्राग्भ्यः | **ष.** | प्राचः | प्राचोः | प्राचाम् |
| **स.** | प्राचि | प्राचोः | प्राक्षु | **सं.** | हे प्राङ् ! | हे प्राञ्चौ ! | हे प्राञ्चः ! |

प्रत्यङ् । प्रत्यञ्चौ । प्रतीचः । प्रत्यग्भ्याम् ॥ उदङ् । उदञ्चौ ॥

**३३६. उद ईत् ६ । ४ । १३९ ॥**

उच्छब्दात्परस्य लुप्तनकारस्याञ्चतेर्भस्याकारस्य ईत् ।

---

**प्रति अच् (पश्चिमदिशा देश काल)** प्रति शब्दपूर्वक अञ्च् धातु धातुदेखि "ऋत्विग्दधृक्"ले क्विन् प्रत्यय भयो सर्वापहारी लोप भयो, 'प्रति अञ्च्' भयो, "अनिदितां हलः०"ले "प्रत्ययलोपे प्रत्ययलक्षणम्" लाएर कित् प्रत्यय क्विन्को वकार पर मानेर पूर्ववत् नकारको लोप भयो, 'प्रति अच्' शब्द बन्यो ।

**प्रत्यङ्**– प्रति अच् शब्ददेखि सु आयो, 'प्रति अच्+स्' भयो, "उगिदचां सर्वनामस्थाने०"ले नुम् भयो, 'प्रति अन्+च्+स्' भयो, पूर्ववत् नकारको अनुस्वार परसवर्ण भएन, सकारको "हलङ्याब्भ्यो०"ले लोप भयो, चकारको संयोगान्तलोप भयो, नकारका स्थानमा "क्विन्प्रत्ययस्य कुः" ले कुत्व हुँदा पूर्ववत् ङकार भयो, 'प्रति+अङ्', यहाँ "इको यणचि"ले यण् भयो, 'प्रत्यङ्' सिद्ध भयो ।

**प्रत्यञ्चौ**– 'प्रति अच्'शब्ददेखि औ आयो, 'प्रति अच्+औ' भयो, 'उदगिद्चां०'ले नुम् भयो, अनुस्वार परसवर्ण भयो, 'प्रति अञ्च्+औ' भयो, 'प्रति+अञ्च्' यहाँ "इको यणचि"ले यण् भयो, वर्णमेलन भयो, 'प्रत्यञ्चौ' सिद्ध भयो । जस्, अम्, औट्मा पनि यस्तै प्रक्रिया भएर 'प्रत्यञ्चः', 'प्रत्यञ्चम्', 'प्रत्यञ्चौ' यी रूप सिद्ध हुन्छन् ।

**प्रतीचः**-प्रति अच् शब्देखि शस् आयो, 'प्रति अच्+अस्' भयो, अस्लाई पर राखेर प्रति अच्लाई भसंज्ञा भएपछि "अचः"ले अकारको लोप भयो, 'प्रतिच्+अस्' भयो, "चौ"ले प्रतिका इकारका स्थानमा दीर्घ ईकार भयो, 'प्रतीच्+अस्'-'प्रतीचस्' भयो । रुत्व, विसर्ग भयो, 'प्रतीचः' सिद्ध भयो ।

टामा पनि अच्का अकारको लोप प्रतिका इकारका स्थानमा दीर्घ भएर 'प्रतीचा' सिद्ध हुन्छ । अरू ङे आदि अजादि विभक्तिमा पनि यस्तै प्रक्रिया हुन्छ ।

**प्रत्यग्भ्याम्**– प्रति अच्शब्ददेखि भ्याम् आयो, 'प्रति अच्+भ्याम्' भयो, भ्याम्लाई पर राखेरप्रति अच्लाई पदसंज्ञा भयो, "क्विन्प्रत्ययस्य कुः"लाई बाधेर "चोःकुः"ले कुत्व गर्दा चकारका स्थानमा ककार भयो, "झलां जशोऽन्ते"ले जश्त्व भयो, यण् भयो, 'प्रत्यग्भ्याम्' सिद्ध भयो ।

प्रति अच् शब्दमा पनि प्र अच् शब्दमा जस्तै प्रक्रिया हुन्छ । अजादि विभक्तिमा भसंज्ञा भएपछि अकार र नकारको लोप हुन्छ र प्रको अकार र प्रतिका इकारको "चौ"ले दीर्घ हुन्छ । हलादि विभक्तिमा प्र अच् शब्दमा "अकः सवर्णे०"ले दीर्घ हुन्छ प्रति अच् शब्दमा "इकोयणचि"ले यण् हुन्छ, यही फरक छ ।

**उद् अच्**- (उत्तर दिशा, देश, काल) उद् शब्द पूर्वमा हुने अञ्च धातुदेखि "ऋत्विग्दधृक्०"ले क्विन् प्रत्यय भयो, सर्वापहारी लोप भयो, 'उद् अञ्च्' भयो, "प्रत्ययलोपे०" लाएर क्विन्को 'व्' पर मानेर "अनिदितां०"ले नकारको लोप भयो, 'उद् अच्' शब्द बन्यो ।

**उदङ्**– उद् अच् शब्ददेखि सु आयो, 'उद् अच्+स्' भयो, "उगिदचां सर्वनामस्थाने०"ले नुम् भयो, 'उद् अन्+च्+स्' भयो, पूर्ववत् नकारको अनुस्वार परसवर्ण भएन । सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, चकारको संयोगान्तलोप भयो, 'उदन्' भयो, नकारका स्थानमा "क्विन्प्रत्ययस्य कुः"ले कुत्व भएर पूर्ववत् ङकार भयो, 'उदङ्' सिद्ध भयो ।

**उदञ्चौ**– उद् अच् शब्ददेखि औ आयो, 'उद् अच्+औ' भयो "उगिदचां०"ले नुम् भयो, 'उद् अन्+च्+औ' भयो, नकारको अनुस्वार परसवर्ण भयो, वर्णमेलन भयो, 'उदञ्चौ' सिद्ध भयो । जस्, अम्, औट्,मा पनि यही प्रक्रिया हुन्छ ।

**उद इति**– उद् शब्ददेखि पर रहेका नकारको लोप भएका भसंज्ञक अञ्च धातुका अकारका स्थानमा दीर्घ ईकार होस् ।

---

उदीचः । उदीचा । उदग्भ्याम् ॥

**३३७. समः समि ६ । ३ । ९३ ॥**

वप्रत्ययान्तेऽञ्चतौ । सम्यङ् । सम्यञ्चौ । समीचः । सम्यग्भ्याम् ॥

---

**उदीचः**- उद् अच् शब्ददेखि शस् आयो, 'उद् अच्+अस्' भयो, [१३]"अचः"ले अच्का अकारको लोप पायो, त्यसलाई बाधेर "उद ईत्"ले अकारका स्थानमा दीर्घ ईकार भयो, 'उद् ईच्+अस्' भयो, वर्णमेलन भयो, रुत्व, विसर्ग भयो, 'उदीचः' सिद्ध भयो ।

**उदीचा**- उद् अच् शब्ददेखि टा आयो 'उद् अच्+आ' भयो, भसंज्ञा भयो "अचः"ले अच्का अकारको लोप पायो, त्यसलाई बाधेर "उद ईत्"ले अकारका स्थानमा दीर्घ ईकार भयो, वर्ण मेलन भयो, 'उदीचा' सिद्ध भयो ।

**उदग्भ्याम्**- उद् अच् शब्ददेखि भ्याम् आयो, 'उद् अच्+भ्याम्' भयो, पदसंज्ञा भयो, "क्विन्प्रत्ययस्य०"लाई बाधेर "चो कुः"ले कुत्व भयो, जश्त्व भयो, 'उदग्भ्याम्' सिद्ध भयो ।

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | उदङ् | उदञ्चौ | उदञ्चः | **द्वि.** | उदञ्चम् | उदञ्चौ | उदीचः |
| **तृ.** | उदीचा | उदग्भ्याम् | उदग्भिः | **च.** | उदीचे | उदग्भ्याम् | उदग्भ्यः |
| **प.** | उदीचः | उदग्भ्याम् | उदग्भ्यः | **ष.** | उदीचः | उदीचोः | उदीचाम् |
| **स.** | उदीचि | उदीचोः | उदक्षु | **सं.** | हे उदङ् | हे उदञ्चौ | हे उदञ्चः |

**समि अच्**- (राम्रोसँग हिँड्ने व्यक्ति)

**सम इति**- व् प्रत्यय अन्तमा हुने अञ्च् धातु पर भएमा सम् शब्दका स्थानमा समि आदेश होस् ।

सम् शब्द पूर्वमा हुने अञ्च् धातुदेखि क्विन् प्रत्यय भयो, ककारको "लशक्वतद्धिते"ले नकारको "हलन्त्यम्"ले इत्संज्ञा भयो, "तस्यलोपः"ले लोप भयो, इकार उच्चारणार्थ हुनाले स्वतः गयो, व् बाँकी रह्यो, वकारको "वेरपृक्तस्य"ले लोप भयो, 'सम्+अञ्च्' भयो, "प्रत्ययलोपे०"लगाएर 'व्'प्रत्यय पर मानेर "अनिदितां०"ले नकारको लोप भयो, "समः समि"ले समि आदेश भयो, 'समि अच्'शब्द बन्यो ।

**सम्यङ्**- समि अच् शब्ददेखि सु आयो, 'समि अच्+स्' भयो, "उगिदचां०"ले नुम् भयो, 'समि अन्+च्+स्' भयो, नकारको पूर्ववत् अनुस्वार परसवर्ण भएन, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, चकारको संयोगान्त लोप भयो, 'समि अन्' भयो, "क्विन्प्रत्ययस्य०"ले कुत्व हुँदा पूर्ववत् अन्का नकारका स्थानमा ङकार भयो, 'समि+अङ्' भयो, "इको यणचि"ले यण् भयो, 'सम्यङ्' सिद्ध भयो ।

**सम्यञ्चौ**- समि अच् शब्ददेखि औ आयो, 'समि अच्+औ' भयो, "उगिदचां०"ले नुम् भयो । 'समि अन्च+औ' भयो, नकारको अनुस्वार परसवर्ण भयो, 'समि+अञ्च्' यहाँ "इको यणचि"ले यण् भयो, वर्णमेलन भयो, 'सम्यञ्चौ' सिद्ध भयो । यस्तै प्रकारले सर्वनामस्थान- जस्, अम्, औट्‌मा नुम् आगम, अनुस्वार, परसवर्ण हुन्छ । 'समि+अञ्च्' यहाँ 'प्रति+अञ्च्'मा झैं यण् हुन्छ ।

**समीचः** समि अच् शब्ददेखि शस् आयो, 'समि अच्+अस्' भयो, भसंज्ञा भयो, "अचः"ले अच्का अकारको लोप भयो, "चौ"ले समिका इकारको स्थानमा दीर्घ भयो, 'समीच्+अस्'- 'समीचस्', भयो, रुत्व, विसर्ग भयो, 'समीचः' सिद्ध भयो ।

**सम्यग्भ्याम्**-समि अच् शब्ददेखि भ्याम् आयो, 'समि अच्+भ्याम्' पदसंज्ञा भयो, अच्का चकारका स्थानमा "चोःकु"ले कुत्व र जश्त्व भयो, 'समि अग्+भ्याम्' भयो, 'यण्' भयो, 'सम्यग्भ्याम्' सिद्ध भयो ।

---

५७ "अचः", "उद ईत्" यी दुई सूत्रले भसंज्ञक अञ्चधातु भनेकोले भसंज्ञा गर्न शस्आदि अजादि विभक्ति ल्याउनुपर्छ । विभक्ति ल्याएर भसंज्ञा भएपछि मात्र उक्त दुई सूत्रको प्रवृत्ति हुन्छ । "समः समि"मा भसंज्ञक अञ्चधातुको अपेक्षा नहुनाले विभक्ति ल्याउनु भन्दा पहिले नै त्यसको प्रवृत्ति हुन्छ ।

**३३८. सहस्य सध्रिः ६ । ३ । ९५ ॥**

तथा । सध्र्यङ् ॥

**३३९. तिरसस्तिर्यलोपे ६ । ३ । ९४ ॥**

अलुप्ताकारेऽञ्चतौ वप्रत्ययान्ते तिरसस्तिर्यादेशः ।

---

यस्तै प्रकारले समि अच् शब्दका रूप प्रति अच् शब्दका जस्तै हुन्छन् ।

**समि अच् शब्दका रूप–**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| प्र. | सम्यङ् | सम्यञ्चौ | सम्यञ्चः | द्वि. | सम्यञ्चम् | सम्यञ्चौ | समीचः |
| तृ. | समीचा | सम्यग्भ्याम् | सम्यग्भिः | च. | समीचे | सम्यग्भ्याम् | सम्यग्भ्यः |
| प. | समीचः | सम्यग्भ्याम् | सम्यग्भ्यः | ष. | समीचः | समीचोः | समीचाम् |
| स. | समीचि | समीचोः | सम्यक्षु । | सं. | हे सम्यङ् ! | हे सम्यञ्चौ ! | हे सम्यञ्चः ! |

**सहस्येति–**व् प्रत्यय अन्तमा हुने अञ्चधातु पर भएमा सह शब्दका स्थानमा सध्रि आदेश होस् ।

**सध्रि अच्–** (सँगै हिँड्ने साथी) सह अञ्चति यस अर्थमा सह शब्द पूर्वमा हुने अञ्च् धातुदेखि "ऋत्विग्दधृक्०"ले क्विन् प्रत्यय भयो, ककार, नकारको इत्संज्ञा र लोप भयो । इकार उच्चारणार्थ हुनाले स्वतः गयो, व् कारलाई अपृक्तसंज्ञा भएर "वेरपृक्तस्य"ले लोप भयो । 'सह+अञ्च्' यहाँ "प्रत्ययलोपे०" लगाएर कित् व् प्रत्यय पर छ र "अनिदितां०"ले नकारको लोप भयो, "सहस्य सध्रिः"ले सहका स्थानमा सध्रि आदेश भयो, 'सध्रि अच्' शब्द बन्यो ।

**सध्र्यङ्–** सध्रि अच् शब्ददेखि सु आयो, 'सध्रि अच्+स्' भयो, "उगिदचां०"ले नुम् भयो, 'सध्रि अन्+च+स्' भयो । 'सध्रि अन्+च्+स्' यहाँ सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, चकारको संयोगान्तलोप भयो, 'सध्रि+अन्' यहाँ अन्का नकारका स्थानमा कुत्व भएर पूर्ववत् ङकार भयो, 'सध्रि+अङ्' भयो । 'सध्रि+अङ्' यहाँ "इको यणचि"ले यण् भयो, 'सध्र्यङ्' सिद्ध भयो ।

सध्रि अच् शब्दमा साधनप्रक्रिया र रूप, समि अच्मा जस्तै ऊह गर्नु ।

**सध्रि अच् शब्दका रूप–**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| प्र. | सध्र्यङ् | सध्र्यञ्चौ | सध्र्यञ्चः | द्वि. | सध्र्यञ्चम् | सध्र्यञ्चौ | सध्रीचः |
| तृ. | सध्रीचा | सध्र्यग्भ्याम् | सध्र्यग्भिः | च. | सध्रीचे | सध्र्यग्भ्याम् | सध्र्यग्भ्यः |
| पं. | सध्रीचः | सध्र्यग्भ्याम् | सध्र्यग्भ्यः | ष. | सध्रीचः | सध्रीचोः | सध्रीचाम् |
| स. | सध्रीचि | सध्रीचोः | सध्र्यक्षु | सं. | हे सध्र्यङ् ! | हे सध्र्यञ्चौ ! | हे सध्र्यञ्चः ! |

**तिरस इति–** अकारको लोप नभएको वप्रत्ययान्त अञ्च धातु पर भएमा तिरस् शब्दका स्थानमा तिरि आदेश होस् ।

यो सूत्रले अकारको लोप नभएको अञ्च धातु भन्छ । अकारको लोप गर्ने सूत्र "अचः"ले भसंज्ञक अञ्च धातु भन्दछ । भसंज्ञा गर्न विभक्ति ल्याउनु पर्दछ । "तिरसस्तिरि०" र "अचः" यी दुई सूत्र परस्पर सम्बन्धित छन् । अतः विभक्ति आएपछि मात्र तिरि आदेश गर्नु पर्दछ । सर्वनामस्थान पर भएमा र हलादि विभक्ति पर भएमा "अचः"ले अकारको लोप नहुने हुँदा तिरि आदेश हुन्छ ।

**तिरस् अच्–** (तेर्सो, तेर्छो हिंड्ने) तिरः अञ्चति यस विग्रहमा तिरस् शब्द पूर्वमा हुने अञ्च

तिर्यङ् । तिर्यञ्चौ । तिरश्चः । तिर्यग्भ्याम् ॥

**३४०. नाञ्चेः पूजायाम् ६ । ४ । ३० ॥**

पूजार्थस्याञ्चतेरुपधाया नस्य लोपो न ।

---

धातुदेखि "ऋत्विग्दधृक्०"ले क्विन् प्रत्यय भयो । ककार नकारको इत्संज्ञा र लोप भएपछि उच्चारणार्थ इकार स्वतः गयो । व् बाँकी रह्यो, त्यसको "वेरपृक्तस्य"ले लोप भएपछि, 'तिरस्+अञ्च्' यहाँ "अनिदितां०"ले लुप्त व् प्रत्ययलाई निमित्त मानेर नकारको लोप भयो, 'तिरस् अच्' शब्द बन्यो ।

**तिर्यङ्** - तिरस्-अच् शब्ददेखि सु आयो, 'तिरस् अच्+स्' भयो, सर्वनामस्थान पर हुनाले भसंज्ञा भएन । अतः "अचः"ले अकारको लोप भएन । "तिरसस्तिर्यलोपे"ले "प्रत्ययलोपे०" लाएर वप्रत्यान्त अञ्च धातु पर छ र तिरस्का स्थानमा तिरि आदेश भयो, 'तिरि+अच्+स्'भयो, "उगिदचां सर्वनामस्थाने०"ले नुम भयो, 'तिरि+अन्च्+स्' भयो, सकारको "हलङ्याब्भ्यो०"ले लोप भयो, 'तिरि+अन्च्' भयो, चकारको "संयोगान्तस्य लोपः"ले लोप भयो । 'तिरि अन्' यहा नकारको "क्विन्प्रत्ययस्य कुः"ले कुत्व भएर ङकार भयो, 'तिरि+अङ्' भयो, यण् भयो 'तिर्यङ्' सिद्ध भयो ।

**तिर्यञ्चौ**– तिरस् अच् शब्ददेखि औ आयो, पूर्ववत् तिरि आदेश भयो, "उगिदचां०"ले नुम् भयो, अनुस्वार परसवर्ण भयो, 'तिरि अञ्च्+औ' भयो, 'तिरि+अञ्च्' यहाँ यण् भयो, वर्ण मेलन भयो, 'तिर्यञ्चौ' सिद्ध भयो । यस्तै प्रकारले जस्, अम्, औट्, मा रूप सिद्ध गर्नु ।

**तिरश्चः**– तिरस्-अच् शब्ददेखि शस् आयो, 'तिरस् अच्+अस्' भयो, अस्लाई पर राखेर **तिरस्** अच् यसलाई "यचि भम्"ले भसंज्ञा भयो, "अचः"ले अच्का अकारको लोप नहुँदै **"तिरसस्तिर्यलोपे"**ले तिरि आदेश पाएकोमा "अकृतव्यूहाः पाणिनीयाः" यो परिभाषाले निमित्त **विनाशोन्मुख** देखेर त्यो निमित्तलाई मानेर पाणिनीयहरू कार्य गर्दैनन्, भनेकोले यहाँ अच्को अकार लोप हुन आटेको छ र तत्प्रयुक्त कार्य तिरि आदेश भएन । यो परिभाषाले पहिले अकारको लोप भयो, लोप भएपछि तिरि आदेश पाएन । सकारको "स्तोःश्चुनाश्चुः"ले श्चुत्व भएर शकार भयो, वर्ण मेलन भयो, 'तिरश्चस्' भयो, रुत्व, विसर्ग भयो, 'तिरश्चः' सिद्ध भयो ।

शस्मा जस्तै टा आदि अजादि विभक्ति पर भएमा तिरि आदेश हुन्न । सु, औ, जस्, अम्, औट् मा र हलादि विभक्तिमा तिरि आदेश हुन्छ ।

**तिर्यग्भ्याम्**– तिरस् अच् शब्ददेखि भ्याम् 'तिरस् अच्+भ्याम्' भयो, "तिरसस्तिर्यलोपे"ले तिरस्का स्थानमा तिरि आदेश भयो, 'तिरि+अच्+भ्याम्', 'क्विन्प्रत्ययस्य कुः'लाई बाधेर "चोःकुः"ले कुत्व भयो, जश्त्व भयो, 'तिरि+अग्भ्याम्' भयो, यण् भयो, 'तिर्यग्भ्याम्' सिद्ध भयो ।

**तिरस् अच् शब्दका रूप–**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | तिर्यङ् | तिर्यञ्चौ | तिर्यञ्चः | **द्वि.** | तिर्यञ्चम् | तिर्यञ्चौ | तिरश्चः |
| **तृ.** | तिरश्चा | तिर्यग्भ्याम् | तिर्यग्भिः | **च.** | तिरश्चे | तिर्यग्भ्याम् | तिर्यग्भ्यः |
| **प.** | तिरश्चः | तिर्यग्भ्याम् | तिर्यग्भ्यः | **ष.** | तिरश्चः | तिरश्चोः | तिरश्चाम् |
| **स.** | तिरश्चि | तिरश्चोः | तिर्यक्षु | **सं.** | हे तिर्यङ् ! | हे तिर्यञ्चौ ! | हे तिर्यञ्चः ! |

**नाञ्चेरिति**– पूजार्थक अञ्च् धातुका उपधामा रहेको नकारको लोप नहोस् ।

प्राङ् । प्राञ्चौ । नलोपाभावादल्लोपो न । प्राञ्चः । प्राङ्भ्याम् । प्राङ्क्षु ।

---

अञ्च् धातुका गति (हिंड्नु) र पूजा (पूजा गर्नु) [५८] दुई अर्थ छन् "ऋत्विग्दधृक"ले दुवै अर्थमा क्विन् प्रत्यय हुन्छ, गत्यर्थक अञ्च् धातुका उपधाका नकारको "अनिदितां०"ले लोप हुन्छ पूजार्थक अञ्च धातुको उपधाको नकारको लोप पाएमा यो सूत्रले निषेध हुन्छ ।

**प्राञ्च्-** (राम्रो पुजारी) प्र उपसर्ग पूर्वमा हुने पूजार्थक अञ्च् धातुदेखि "ऋत्विग्दधृक्०"ले क्विन् प्रत्यय भयो, ककार नकार दुवैको इत्संज्ञा, लोप, भयो, इकार उच्चारणार्थ हुनाले स्वतः गयो, व् बाँकी रह्यो, वकारको "वेरपृक्तस्य"ले लोप भयो, प्र अञ्च् भयो । "प्रत्ययलोपे" लगाएर वकार कित् प्रत्यय पर मानेर अनुस्वार परसवर्ण भएको ञकारलाई नकार नै देखेर "अनिदितां०"ले लोप पाएकोमा "नाञ्चेः पूजायाम्"ले निषेध भयो, 'प्र+अञ्च्' यहाँ, 'अकः सवर्णे०'ले दीर्घ भयो, प्राञ्च् शब्द बन्यो ।

**प्राङ्-** प्राञ्च् शब्ददेखि सु आयो, 'प्राञ्च्+स्' भयो, सकारको "हल्ङ्याब्०"ले लोप भयो, चकारको संयोगान्तलोप भयो, "निमित्तापाये०" लगाएर चकार निमित्त नाश भएपछि परसवर्ण ञकार नाश भएर नकार भयो, 'प्रान्' भयो, अथवा अनुस्वार परसवर्ण असिद्ध भएर नकार नै देख्यो र "नलोपः प्राति०"ले नकारको लोप पाएमा संयोगान्तलोप असिद्ध भएको हुनाले लोप भएन । नकारको "क्विन्प्रत्ययस्य०"ले कुत्व भएर ङकार भयो, 'प्राङ्' सिद्ध भयो ।

**प्राञ्चौ-** प्राञ्च् शब्ददेखि औ आयो, 'प्राञ्च्+औ' भयो, वर्णमेलन भयो, 'प्राञ्चौ' सिद्ध भयो, । यसैगरी सबै अजादि विभक्तिमा प्रकृति प्रत्यय संयोग र विभक्तिका अन्तमा रहेको सकारको रुत्व, विसर्ग बाहेक अरू केही कार्य हुँदैन । शस् आदि अजादि विभक्तिमा भसंज्ञा भए पनि नकारको लोप नभएको हुनाले "अचः"ले अकारको लोप हुँदैन । हलादि विभक्तिमा पदसंज्ञा भएर चकारको संयोगान्तलोप भएपछि "निमित्तापाये०" लाएर ञकारको नकार हुन्छ र नकारका स्थानमा "क्विन्प्रत्ययस्य कुः"ले कुत्व भएर ङकार हुन्छ । सुप्मा भने कुक् आगम आदि विशेष कार्य पनि हुन्छ ।

**नलोपाभावादिति-** नलोप नहुने हुनाले अकारको लोप हुँदैन । "अचः"ले नकारको लोप भएका अञ्च् धातुका अकारको लोप होस् भन्छ, यहाँ पूजार्थक अञ्च धातु हुनाले "अनिदितां०"ले पाएको नकारको लोप "नाञ्चेः पूजायाम्"ले निषेध भएको छ । अतः अकारको लोप हुँदैन भन्ने तात्पर्य हो ।

**प्राञ्चः-** प्राञ्च् शब्ददेखि शस् आयो, 'प्राञ्च्+अस्' भयो, भसंज्ञा भए पनि नकारको लोप हुने अञ्च् धातु नहुनाले अकारको लोप भएन वर्णमेलन भयो, 'प्राञ्चस्' रुत्व, विसर्ग भयो, 'प्राञ्चः' सिद्ध भयो । टामा- प्राञ्चा, भ्याम् भिस्मा- प्राङ्भ्याम्, प्राङ्भिः यी रूप हुन्छन् ।

**प्राङ्ख्षु / प्राङ्क्षु / प्राङ्षु-** प्राञ्च् शब्ददेखि सुप् आयो, 'प्राञ्च्+स्' भयो, पदसंज्ञा भयो, "ङणोः कुक् टुक् शरि"ले कुक् आगम भयो "चयो द्वितीयाः०"ले ककारको खकार भयो, 'प्राङ्ख्सु' आदेशप्रत्यययोः" षत्व भयो, 'प्राङ्ख्षु' सिद्ध भयो, द्वितीय आदेश नभएमा पनि ककारदेखि पर हुनाले सुका सकारको षत्व भयो, कषसंयोगबाट क्ष भयो, 'प्राङ्क्षु' सिद्ध भयो, कुक् आगम नभएको पक्षमा पनि षत्व भयो, 'प्राङ्षु' सिद्ध भयो । यसरी सुप्मा तीन रूप भए ।

---

५८ अञ्चु गतिपूजनयोः इति धातुपाठे

एवं पूजार्थे प्रत्यङ्ङादयः ॥ क्रुङ् । क्रुञ्चौ । क्रुङ्भ्याम् ॥ पयोमुक्, पयोमुग् । पयोमुचौ । पयोमुग्भ्याम् ॥

**प्राञ्च्शब्दका रूप-**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | प्राङ् | प्राञ्चौ | प्राञ्चः | **द्वि.** | प्राञ्चम् | प्राञ्चौ | प्राञ्चः |
| **तृ.** | प्राञ्चा | प्राङ्भ्याम् | प्राङ्भिः | **च.** | प्राञ्चे | प्राङ्भ्याम् | प्राङ्भ्यः |
| **प.** | प्राञ्चः | प्राङ्भ्याम् | प्राङ्भ्यः | **ष.** | प्राञ्चः | प्राञ्चोः | प्राञ्चाम् |
| **स.** | प्राञ्चि | प्राञ्चोः | प्राङ्खषु/प्राङ्क्षु/ङ्षु | **सं.** | हे प्राङ् ! | हे प्राञ्चौ ! | हे प्राञ्चः ! |

**एवं पूजार्थ इति-** यस्तै प्रकारले पूजा अर्थमा प्रत्यञ्च् शब्दको प्रत्यङ् आदि र प्राञ्च् उदञ्च् शब्दका प्राङ्, उदङ् आदि रूप हुन्छन् ।

**क्रुञ्च्** **(करेङ् कुरूङ्, पक्षी विशेष)**

क्रुञ्च् धातुदेखि "ऋत्विग्दधृक्०"ले क्विन् प्रत्यय भयो, सर्वापहारी लोप भयो, व् प्रत्यय कित् पर मानेर "अनिदितां०"ले नकारको लोप पाएमा "क्रुञ्चेर्नलोपाभावश्च निपात्यते" क्रुञ्च्धातुको नकारका लोपको अभाव पनि निपातन गरिन्छ भनेकोले नकारको लोप भएन, क्रुञ्च् शब्द बन्यो ।

**क्रुङ्-** क्रुञ्च् शब्ददेखि सु आयो, 'क्रुञ्च्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, चकारको संयोगान्तलोप भयो, "निमित्तापाये०"ले ञकारको नकार भयो, नकारका स्थानमा "क्विन्प्रत्ययस्य०"ले कुत्व भएर नकार भयो, 'क्रुङ्' सिद्ध भयो ।

**क्रुञ्चौ-** क्रुञ्च् शब्ददेखि औ आयो, वर्णमेलन भयो, 'क्रुञ्चौ' सिद्ध भयो । यस्तै प्रकारले सबै अजादि विभक्तिमा विभक्ति संयोग र सकारान्त विभक्तिमा सकारको रुत्व, विसर्गबाहेक अरू विशेष कार्य केही छैन ।

**क्रुङ्भ्याम्-** क्रुञ्च् शब्ददेखि भ्याम् आयो, 'क्रुञ्च्+भ्याम्' भयो, चकारको संयोगान्तलोप ञकारको नकार, नकारका स्थानमा कुत्व भएर ङकार भयो, 'क्रुङ्भ्याम्' सिद्ध भयो । सुप् बाहेक अरू हलादि विभक्तिमा यही प्रक्रियाद्वारा रूप सिद्ध हुन्छन् । सुप्मा चकारको संयोगान्तलोप र नकारको कुत्व भएर ङकार भएपछि कुक् आगम, द्वितीय आदेश, षत्व भएर 'क्रुङ्ख्षु', द्वितीय आदेश नभएमा षत्व, क्षत्व, 'क्रुङ्क्षु' कुक् आगम नभएमा षत्व 'क्रुङ्षु' सिद्ध भयो । यसरी प्राञ्च् शब्दमा जस्तै तीन रूप हुन्छन् । पूजार्थका प्राञ्च्, प्रत्यञ्च्, उदञ्च्, शब्दका जस्तै क्रुञ्च् शब्दका पनि रूप हुन्छन् ।

**पयोमुच्-** (बादल) पयः मुञ्चति, यस अर्थमा "क्विप् च"ले क्विप् प्रत्यय भएर सर्वापहारी लोप भएपछि पयोमुच्शब्द बन्दछ ।

**पयोमुक्-ग्-** पयोमुच् शब्ददेखि सु आयो, 'हल्ङ्याब्भ्यो०"ले सकारको लोप भयो, "चोः कुः"ले चकारको कुत्व भयो, जश्त्व चर्त्व भयो, 'पयोमुक्' चर्त्व नभएका पक्षमा 'पयोमुग्' यी दुई रूप सिद्ध भए ।

**पयोमुचौ-** पयोमुच् शब्ददेखि औ आयो, "पयोमुच्+औ" भयो, वर्णमेलन भयो, 'पयोमुचौ' सिद्ध भयो ।

**पयोमुग्भ्याम्-** पयोमुच् शब्ददेखि भ्याम् आयो, कुत्व भयो, जश्त्व भयो, 'पयोमुग्भ्याम्' सिद्ध भयो । यस्तै प्रकारले अजादि विभक्तिमा शब्दको विभक्ति संयोग भएपछि आवश्यक स्थलमा रुत्व, विसर्ग हुन्छ । हलादि विभक्तिमा चकारको कुत्व जश्त्व हुन्छ । सुप्मा चकारको कुत्व, जश्त्व, चर्त्व सुप्का सकारको षत्व क्षत्व भएर 'पयोमुक्षु' यो रूप हुन्छ ।

उगित्वान्नुमि-

**३४१. सान्तमहतः संयोगस्य ६ । ४ । १० ॥**

सान्तसंयोगस्य महतश्च यो नकारस्तस्योपधाया दीर्घोऽसम्बुद्धौ सर्वनामस्थाने । महान् । महान्तौ । महान्तः । हे महन् । महद्भ्याम् ॥

---

**उगित्वादिति**– महत् शब्दको उगित् हुनाले नुम् आगम हुन्छ ।

**सान्तेति**– दन्त्य सकार अन्तमा हुने संयोगको र महत्शब्दको जो नकार छ त्यसका उपधाका स्थानमा दीर्घ होस् संबुद्धिभिन्न सर्वनामस्थान पर भएमा ।

**महत्**- (ठूलो) **महान्**– महत् शब्ददेखि सु आयो, 'महत्+स्' भयो, "उगिदचा०"ले नुम् भयो, 'महन्त्+स्' भयो । 'महन्त्+स्' यहाँ महत् शब्दको [५९] नकारको उपधा-महको अकारका स्थानमा, सर्वनामस्थान स् पर भएकोले "सान्तमहतः०" यो सूत्रले दीर्घ गर्दा दीर्घ भनेका आ,ई,ऊ,ॠ,ए,ओ,ऐ,औ सवै पाएमा आन्तरतम्यात् महका अकारका स्थानमा आकार भयो, 'महान्त्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, तकारको संयोगान्तलोप भयो, 'महान्' सिद्ध भयो ।

**महान्तौ**– महत्शब्ददेखि औ आयो, "उगिदचां०"ले नुम् भयो, 'महन्त्+औ' भयो, "सान्तमहतः०"ले हका अकारका स्थानमा दीर्घ भयो, 'महान्तौ' सिद्ध भयो ।

**महान्तः** महत् शब्ददेखि जस् आयो, 'महत्+अस्' पूर्ववत् नुम् उपधादीर्घ भयो, 'महान्तः' सिद्ध भयो ।

**हे महन्**– महत् शब्ददेखि संबोधन अर्थमा प्रथमाको एकवचन सु आयो, 'महत्+स्' भयो, "उगिदचां०"ले नुम् भयो, 'महन्त्+स्' भयो, "असंबुद्धौ सर्वनामस्थाने" भनेकोले यहाँ संबुद्धि पर छ र "सान्तमहत०"ले उपधादीर्घ भएन । सकारको "हल्ङ्याब्०"ले लोप भयो, तकारको संयोगान्तलोप भयो, हे शब्दको पूर्वप्रयोग भयो, 'हे महन् !' सिद्ध भयो । औ, जस्, मा "सान्तमहतः०"ले दीर्घ हुन्छ । हे महान्तौ ! हे महान्तः ! हुन्छ । अरू अजादि विभक्तिमा विभक्ति संयोग हुन्छ । विशेष कार्य केही छैन ।

**महद्भ्याम्**– महत् शब्ददेखि भ्याम् आयो, जश्त्व भयो, 'महद्भ्याम्' सिद्ध भयो । सुप्वाहेक अरू हलादि विभक्तिमा पनि जश्त्व बाहेक अरू कार्य केही छैन । सुप्मा जश्त्व र "खरिच"ले चर्त्व हुन्छ र 'महत्सु' यो रूप बन्छ ।

**महत् शब्दका रूप**–

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | महान् | महान्तौ, | महान्तः | **द्वि.** | महान्तम् | महान्तौ | महतः |
| **तृ.** | महता | महद्भ्याम् | महद्भिः | **च.** | महते | महद्भ्याम् | महद्भ्यः |
| **प.** | महतः | महद्भ्याम् | महद्भ्यः | **ष.** | महतः | महतोः | महताम् |
| **स.** | महति | महतोः | महत्सु | **सं.** | हे महन् ! | हे महान्तौ ! | हे महान्तः ! |

**अत्वेति**– अतु अन्तमा हुने अङ्गका उपधाका स्थानमा दीर्घ होस्, धातुभिन्न अस् अन्तमा हुने अङ्गका उपधाका स्थानमा पनि दीर्घहोस्, संबुद्धिभिन्न सर्वनामस्थान पर भएमा ।

---

५९ महन् त् स् यहाँ "सान्तमहतः संयोगस्य"ले सर्वनामस्थान पर भएमा भनेकोले सकार त पर नै रह्यो, उपधामा त नकार छ नि ? महको अकार कसरी उपधामा भयो ? यो शङ्का नगर्नू । सूत्रमा नै नकारको उपधा भनेको छ, नकारलाई अन्त्य अल् मानेर पूर्वको वर्ण महको अकार नै उपधा हुन्छ । यस्तै औआदि विभक्तिमा पनि जान्नू ।

**३४२. अत्वसन्तस्य चाधातोः ६ । ४ । १४ ॥**

अत्वन्तस्योपधाया दीर्घो धातुभिन्नासन्तस्य चासम्बुद्धौ सौ परे । उगित्वान्नुम् । धीमान् । धीमन्तौ । धीमन्तः । हे धीमन् । शसादौ महद्वत् ॥ "भातेर्डवतुः" । डित्त्वसामर्थ्यादभस्यापि टेर्लोपः । भवान् । भवन्तौ । भवन्तः । शत्रन्तस्य भवन् ॥

---

**धीः** अस्ति अस्य, यस अर्थमा "तदस्यास्त्यस्मिन्निति मतुप्" भन्ने सूत्रले मतुप् प्रत्यय भएर धीमत्शब्द बन्दछ ।

**धीमत्** (बुद्धिमान्) **धीमान्**– धीमत् शब्ददेखि सु आयो, धीमत् स भयो [६०] "अत्वसन्तस्य चाधातोः"ले दीर्घ भयो, "उगिदचां सर्वनामस्थाने०"ले नुम् भयो, 'धीमान्त्+स्' भयो, "हल्ङ्याब्भ्यो०"ले सुको लोप भयो, तकारको संयोगान्तलोप भयो, 'धीमान्' सिद्ध भयो ।

**धीमन्तौ**– धीमत् शब्ददेखि औ आयो, 'धीमत्+औ' भयो, "उगिदचां०"ले नुम् भयो, वर्णमेलन भयो, 'धीमन्तौ' सिद्ध भयो ।

**धीमन्तः** धीमत् शब्ददेखि जस् आयो, धीमत्+अस्' भयो, "उगिदचां०"ले नुम् भयो, 'धीमन्त्+अस्'- 'धीमन्तस्' रुत्व, विसर्ग भयो, 'धीमन्तः' सिद्ध भयो ।

**हे धीमन्**– धीमत् शब्ददेखि संबोधन अर्थमा प्रथमाको एकवचन सु आयो, नुम् भयो, 'धीमन्त्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, तकारको संयोगान्तलोप भयो, हे शब्दको पूर्वप्रयोग भयो, 'हे धीमन्' सिद्ध भयो ।

**शसादाविति**– शस् आदि विभक्तिमा धीमत् शब्द महत् शब्द जस्तै जान्नु ।

**भातेरिति**– भा धातुदेखि डवतु प्रत्यय होस् ।

**डित्त्वसामर्थ्यादिति**– डवतु प्रत्ययमा डित्त्व (डकारको इत्संज्ञा) विधान गर्नाका सामर्थ्यले भसंज्ञा नभए पनि टिको लोप हुन्छ ।

**भवत्** (तपाइँ) **शब्द**– "भातेर्डवतुः" यस वार्तिकले भा धातुदेखि डवतु प्रत्यय भयो, डकारको "चुटू"ले उकारको "उपदेशेऽजनुनासिक०"ले इत्संज्ञा लोप भयो, 'भा+अवत्' भयो, डवतुमा डित्त्व विधान गर्नाका सामर्थ्यले भसंज्ञा नभए तापनि भाको टिको लोप भयो, 'भवत्' शब्द सिद्ध भयो ।

**भवान्**– भवत् शब्ददेखि सु आयो, 'भवत्+स्' भयो, "अत्वसन्तस्य चाधातोः"ले दीर्घ भयो, 'भवात्+स्' भयो, "उगिदचां०"ले नुम् भयो, 'भवान्त्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो"ले लोप भयो, तकारको संयोगान्तलोप भयो । संयोगान्तलोप असिद्ध भएकोले नकारको लोप भएन, 'भवान्' सिद्ध भयो ।

**भवन्तौ**– भवत् शब्ददेखि औ आयो, नुम् भयो, 'भवन्तौ' सिद्ध भयो ।

**भवन्तः**– भवत् शब्ददेखि जस् आयो, नुम् भयो, 'भवन्तस्' रुत्व, विसर्ग भयो, 'भवन्तः' सिद्ध भयो । भवत् शब्दका सबै रूप धीमत् शब्दका जस्तै हुन्छन् ।

**शत्रन्तस्येति**– शतृप्रत्ययान्त भवत् शब्दको सुमा त भवन् यस्तो रूप हुन्छ । अतु प्रत्यय अन्तमा नहुने हुनाले "अत्वसन्तस्य०"ले दीर्घ हुँदैन ।

**भवन्**– शतृ प्रत्ययान्त भवत् शब्ददेखि सु आयो, नुम् भयो, 'भवन्त्+स्' यहाँ हल्ङ्यादि सूत्रले सकारको लोप भयो । संयोगान्त लोप भयो, 'भवन्' सिद्ध भयो । बाँकी सबै विभक्तिमा शतृ प्रत्ययान्त भवत् शब्दका रूप पनि डवतु प्रत्ययान्त भवत् शब्दका जस्तै हुन्छन् ।

---

६० यहाँ "परं नित्यं च नुमं बाधित्वा वचनसामर्थ्यादादौ दीर्घस्ततो नुम्" यो परिभाषा स्मरण गर्नू ।

**३४३. उभे अभ्यस्तम् ६ । १ । ५ ॥**

षाष्ठद्वित्वप्रकरणे ये द्वे विहिते ते उभे समुदिते अभ्यस्तसंज्ञे स्तः ॥

**३४४. नाभ्यस्ताच्छतुः ७ । १ । ७८ ॥**

अभ्यस्तात्परस्य शतुर्नुम् न । ददत्, ददद् । ददतौ, ददतः ॥

**३४५. जक्षित्यादयः षट् ६ । १ । ६ ॥**

षड्धातवोऽन्ये जक्षितिश्च सप्तम एते अभ्यस्तसंज्ञाः स्युः । जक्षत्, जक्षद् ।

---

**उभे इति–** छैटौं अध्यायका द्वित्वप्रकरणमा जो द्वित्व विधान गरिएको छ, ती दुवै द्वित्व भएका समुदाय अभ्यस्तसंज्ञक होऊन् ।

**नाभ्यस्तादिति–** अभ्यस्तसंज्ञक धातुदेखि पर रहेको जो शतृ प्रत्यय, तदन्त अङ्गको नुम् नहोस् ।

**ददत्–** (दिइरहने व्यक्ति) दा धातुदेखि शतृ प्रत्यय भयो, शप् प्रत्यय भयो, शप्को श्लु भयो, धातुको द्वित्व भयो, अभ्यासको ह्रस्व भयो, 'ददा+अत्' भयो, ददा यसलाई "उभे अभ्यस्तम्"ले अभ्यस्तसंज्ञा भयो, "श्नाभ्यस्तयोरातः"ले आकारको लोप भयो, वर्णमेलन भयो, 'ददत्'शब्द बन्यो ।

**ददत्/ददद्–** ददत् शब्ददेखि सु आयो, 'ददत्+स्' भयो, "उगिदचां०"ले नुम् पाएकोमा "नाभ्यस्ताच्छतुः"ले दद् यो अभ्यस्त धातुदेखि पर शतृ प्रत्यय छ र तदन्त अङ्ग ददत् यसको नुम् निषेध भयो । सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, जश्त्व चर्त्व 'ददत्', 'ददद्' दुई रूप सिद्ध भए । यस्तै प्रकारले अरू रूप पनि बन्दछन् । नुम् पाएको ठाउँमा निषेध हुन्छ । हलादि विभक्तिमा जश्त्व हुन्छ । अरू कार्य छैन ।

**ददत् शब्दका रूप–**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | ददत्/द् | ददतौ | ददतः | **द्वि.** | ददतम् | ददतौ | ददतः |
| **तृ.** | ददता | दद्द्भ्याम् | दद्द्भिः | **च.** | ददते | दद्द्भ्याम् | दद्द्भ्यः |
| **प.** | ददतः | दद्द्भ्याम् | दद्भ्यः | **ष.** | ददतः | ददतोः | ददताम् |
| **स.** | ददति | ददतोः | ददत्सु | **सं.** | हे ददत्/द् ! | हे ददतौ ! | हे ददतः ! |

**जक्षीति–** जक्ष् आदिमा हुने अरू छ धातु र सातौं जक्ष्धातुसमेत यी सात धातु अभ्यस्तसंज्ञक होऊन् । जक्षआदि सातधातुको परिगणन तलको श्लोकमा गरिएको छ ।

**"जक्षि जागृ दरिद्रा शास् दीधीङ् वेवीङ् चकास् तथा ।**
**अभ्यस्तसंज्ञा, विज्ञेया धातवो मुनिभाषिताः ॥"**

**जक्षत्–** (खाइरहेको) **जाग्रत्–** (जागा रहेको), **दरिद्रत्–** (दुःख पाइरहेका)

**शासत्–** (शासन गरिरहेको) **चकासत्–** (शोभापाइरहेको)

जक्ष् धातुदेखि शतृ प्रत्यय भएर जक्षत् शब्द बन्दछ ।

**जक्षत्/द्–** जक्षत् शब्ददेखि सु आयो, 'जक्षत्+स्' भयो, "जक्षित्यादयः षट्"ले जक्ष्लाई अभ्यस्तसंज्ञा भयो, "उगिदचां०"ले नुम पाएकोमा "नाभ्यस्ताच्छतुः"ले निषेध भयो, सुको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, जश्त्व चर्त्व भयो, 'जक्षत्/द्' सिद्ध भयो ।

यसैगरी औ,जस्,अम्,औट्मा "नाभ्यस्ताच्छतुः"ले नुम् निषेध हुन्छ । सर्वनामस्थान नहुनाले शसादिमा नुम् पाउँदैन । हलादिमा जश्त्व भएर 'जक्षद्भ्याम्' इत्यादि रूप हुन्छन् ।

जक्षतौ । जक्षतः ॥ एवं जाग्रत् । दरिद्रत् । शासत् । चकासत् ॥ गुप्, गुब् । गुपौ । गुपः गुब्भ्याम् ॥

**३४६. त्यदादिषु दृशोऽनालोचने कञ्च ३ । २ । ६० ॥**

त्यदादिषूपपदेष्वज्ञानाथाद्दृशेः कञ् स्यात्, चात् क्विन् ॥

**३४७. आ सर्वनाम्नः ६ । ३ । ९१ ॥**

सर्वनाम्न आकारोऽन्तादेशः स्याद्दृग्दृशवतुषु । तादृक्, तादृग् ।

---

सुप्मा जश्त्व चर्त्व भएर 'जक्षत्सु' यो रूप हुन्छ ।

यस्तै प्रकारले जाग्रत्, दरिद्रत्, शासत्, चकासत्, शब्द पनि जान्नु । यी शब्दका सबै विभक्तिमा ददत् जक्षत् शब्दका जस्तै रूप हुन्छन् ।

**पकारान्त शब्द गुप्-** (रक्षक) **गुप्/गुब्-** गुप् शब्ददेखि सु आयो, 'गुप्+स्'भयो, सुको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, जश्त्व, चर्त्व, भयो, 'गुप्', चर्त्व नभएका पक्षमा 'गुब्' यी दुई रूप सिद्ध भए ।

**गुपौ-** गुप् शब्ददेखि औ आयो, 'गुप्+औ', 'गुपौ' सिद्ध भयो ।

**गुब्भ्याम्-** गुप् शब्ददेखि तृतीयाको एकवचन भ्याम् आयो, पदसंज्ञा भयो, "झलां जशोन्ते"ले जश्त्व भयो, 'गुब्भ्याम्' सिद्ध भयो । यसैगसरी अजादिमा विभक्तिका अच्मा पकार जोडिन जान्छ । हलादिमा पकारको जश्त्व भएर बकार हुन्छ । सुप्मा "खरि च"ले बकारको चर्त्व पनि भएर 'गुप्सु' हुन्छ । अरू विशेष कार्य केही छैन ।

**तालव्य शकारान्त शब्द तादृश्** (त्यस्तो)

**त्यदादिष्विति-** त्यदादि शब्द उपपद भएमा ज्ञानभिन्न अर्थमा रहने दृश् धातुदेखि कञ्प्रत्यय होस् चकार पढ्नाले क्विन् पनि होस् ।

**आ सर्वेति-** सर्वनामसंज्ञक शब्दका अन्त्य अल्का स्थानमा आकार आदेश होस् दृश् शब्द दृश शब्द र वतुप्रत्यय पर भएमा ।

तद् शब्दपूर्वमा हुने दृश् धातुदेखि "त्यदादिषु०"ले क्विन् भयो, क्विन्को सर्वापहारी लोप भयो, 'तद्दृश्' भयो, "आ सर्वनाम्नः"ले तद्का दकारका स्थानमा आकार भयो, 'त+आ+दृ+श्' भयो, 'त+आमा' दीर्घ एकादेश भयो, तादृश् शब्द बन्यो । कञ् प्रत्यय भएमा अकारान्त तादृशशब्द बन्छ । त्यसका राम शब्दका जस्तै रूप हुन्छन् ।

**तादृक्/ग्-** तादृश् शब्ददेखि सु आयो, 'तादृश्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, "सुप्तिङन्तं०"ले पदसंज्ञा भयो, यहाँ तालव्य शकारान्तमा हुने धातु हुनाले तादृश्का शकारका स्थानमा "व्रश्चभ्रस्ज०"ले षकार भयो, "झलां जशोऽन्ते"ले षकारका स्थानमा जश्त्व भएर डकार भयो, तादृड् भयो, अब "क्विन्प्रत्ययस्य कुः"ले डकारका स्थानमा कवर्ग क,ख,ग,घ,ङ पायो, स्थान र अर्थबाट नियम नभएपछि प्रयत्नमा जाँदा आभ्यन्तर प्रयत्नमा पनि नियम भएन र बाह्यप्रयत्नमा स्थानी डकारको संवार, नाद, घोष, अल्पप्राण प्रयत्न छ, आदेशमा संवार, नाद, घोष, अल्पप्राण प्रयत्न भएका ग र ङ दुवै छन् । ती दुईमध्ये अननुनासिक डकारका स्थानमा अननुनासिक ग् भयो, चर्त्व भयो, 'तादृक्', चर्त्व नभएमा 'तादृग्' यसरी दुई रूप सिद्ध भए । क्विन् प्रत्यय भएर बनेका शकारान्त शब्दमा ष,ड,ग,क यो प्रक्रिया स्मृतिमा राख्नु पर्दछ भनेको, "व्रश्चभ्रस्ज०"ले षत्व, अनि "झलां जशोऽन्ते"ले जश्त्व

तादृशौ । तादृशः । तादृग्भ्याम् ॥ व्रश्चेति षः । जश्त्वचर्त्वे । विट्, विड् । विशौ । विशः । विड्भ्याम् ॥

**३४८. नशेर्वा ८ । २ । ६३ ॥**

नशेः कवर्गोऽन्तादेशो वा पदान्ते । नक्, नग्, नट्, नड् ।

---

भएर ष को स्थानमा ड, अनि "क्विन् प्रत्ययस्य कुः"ले कुत्व भएर ग अनि ग्का स्थानमा "वाऽवसाने" ले चर्त्व भएर क हुन्छ । यो प्रक्रिया सु र सुप्मा हुन्छ, अरू हलादि विभक्तिमा ष,ड,ग यो प्रक्रिया मात्र हुन्छ ।

**तादृशौ**– तादृश् शब्ददेखि औ आयो, वर्णमेलन भयो, 'तादृशौ', सिद्ध भयो ।

**तादृशः**– तादृश् शब्ददेखि जस् आयो, 'तादृश्+अस्' वर्णमेलन, रुत्व, विसर्ग भयो, 'तादृशः', सिद्ध भयो ।

**तादृग्भ्याम्**– तादृश् शब्ददेखि भ्याम् आयो, पदसंज्ञा भयो, पूर्ववत् "व्रश्चभ्रस्जसृज०"ले षत्व भयो, जश्त्व भयो, "क्विन्प्रत्ययस्य कुः"ले कुत्व भयो, 'तादृग्भ्याम्' सिद्ध भयो । यसैगरी हलादि विभक्तिमा षत्व, जश्त्व र कुत्व हुन्छ । सुप्मा षत्व, जश्त्व चर्त्व, षत्व, क्षत्व हुन्छ र 'तादृक्षु' हुन्छ ।

अजादि विभक्तिमा शब्दको र विभक्तिको संयोग र सामान्य विभक्ति कार्य हुन्छ । विशेष कार्य केही छैन । यस्तै प्रकारले एतादृश्, त्वादृश्, मादृश्, भवादृश् आदि शब्द जान्नू ।

**तादृश शब्दका रूप–**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | तादृक्/ग् | तादृशौ | तादृशः | **द्वि.** | तादृशम् | तादृशौ | तादृशः |
| **तृ.** | तादृशा | तादृग्भ्याम् | तादृग्भिः | **च.** | तादृशे | तादृग्भ्याम् | तादृग्भ्यः |
| **पं.** | तादृशः | तादृग्भ्याम् | तादृग्भ्यः | **ष.** | तादृशः | तादृशोः | तादृशाम् |
| **स.** | तादृशि | तादृशोः | तादृक्षु । | **सं.** | हे तादृक्/ग् | हे तादृशौ | हे तादृशः |

**विट्/ड्**– विश् शब्ददेखि सु आयो, 'विश्+स्' भयो, सकारको "हल्ङ्याब्०"ले लोप भयो, विश्का शकारको स्थानमा "व्रश्चभ्रस्ज०"ले षत्व भयो, "झलां जशोऽन्ते" जश्त्व भएर षकारका स्थानमा डकार भयो, "वाऽवसाने"ले चर्त्व भयो, 'विट्' सिद्ध भयो । चर्त्व नभएका पक्षमा 'विड्' सिद्ध भयो । यसरी यी दुई रूप सिद्ध भए ।

**विशौ**– विश् शब्ददेखि औ आयो, 'विश्+औ'- 'विशौ' सिद्ध भयो ।

**विशः**- विश् शब्ददेखि जस् आयो, 'विश्+अस्'- 'विशस्' रुत्व, विसर्ग, 'विशः' सिद्ध भयो ।

**विड्भ्याम्**–विश् शब्ददेखि भ्याम् आयो, 'विश्भ्याम्' षत्व, जश्त्व, 'विड्भ्याम्' सिद्ध भयो ।

**सुप्मा**– धुट् आगम भएर 'विट्त्सु', 'विट्सु' दुई रूप हुन्छन् ।

**नशेरिति**– नश् धातुको कवर्ग अन्त्य अल्का स्थानमा आदेश होस् पदान्तमा ।

**नक्/नग्/नट्/नड्**– नश् शब्ददेखि सु आयो, 'नश्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो दीर्घात्०"ले लोप भयो, "व्रश्चभ्रस्जसृजमृज०"ले शकारका स्थानमा षकार भयो, षकारको जश्त्व भएर डकार भयो, "नशेर्वा"ले कुत्व भएर डकारका स्थानमा गकार भयो, "वाऽवसाने"ले चर्त्व भयो, 'नक्' चर्त्व नभएका पक्षमा 'नग्' यी दुई रूप सिद्ध भए । पुनः "नशेर्वा"ले कुत्व

नशौ । नशः । नग्भ्याम्, नड्भ्याम् ॥

**३४९. स्पृशोऽनुदके क्विन् ३ । २ । ५८ ॥**

अनुदके सुप्युपपदे स्पृशेः क्विन् । घृतस्पृक्, घृतस्पृग् । घृतस्पृशौ । घृतस्पृशः ॥

---

नभएका पक्षमा पनि "वाऽवसाने"ले चर्त्व भएर नड्का डकारका स्थानमा ट कार भयो, 'नट्' चर्त्व नभएका पक्षमा 'नड्' यी दुई रूप सिद्ध भए ।

**नशौ, नशः**- औ, जस्, मा यी दुई रूप भए । अजादि विभक्तिमा विभक्तिसंयोग अपेक्षित स्थलमा रुत्व, विसर्ग, यही सामान्य कार्य हो । अरू विशेष कार्य छैन ।

**नग्भ्याम्/नड्भ्याम्**- नश् शब्ददेखि भ्याम् आयो, षत्व जश्त्व भएपछि वैकल्पिक कुत्व भयो, 'नग्भ्याम्', कुत्व नभएका पक्षमा 'नड्भ्याम्', यी दुइ रूप सिद्ध भए । अरू हलादि विभक्तिमा पनि यही प्रक्रिया हुन्छ । सुप्मा षत्व जस्त्व कुत्व चर्त्व भएर 'नक्षु' कुत्व नभएका पक्षमा वैकल्पिक धुट् आगम 'नट्त्सु' धुट् नभएमा 'नट्सु' यी दुई रूप हुन्छन् ।

**नश् शब्दका रूप-**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| **प्र.** | नक्-ग्/नट्-ड् | नशौ | नशः |
| **द्वि.** | नशम् | नशौ | नशः |
| **तृ.** | नशा | नग्भ्याम्/नड्भ्याम्: | नग्भिः/नड्भिः |
| **च.** | नशे | नग्भ्याम्/नड्भ्याम् | नग्भ्यः/नड्भ्यः |
| **पं.** | नशः | नग्भ्याम्/नड्भ्याम् | नग्भ्यः/नड्भ्यः |
| **ष.** | नशः | नशोः | नशाम् |
| **स.** | नशि | नशोः | नक्षु/नट्त्सु/नट्सु |
| **सं.** | हे नक्-ग्/नट्-ड् ! | हे नशौ ! | हे नशः ! |

**स्पृशोऽनुदके इति**- उदक शब्ददेखि भिन्न सुबन्त उपपद भएमा स्पृश धातुदेखि क्विन् प्रत्यय होस् ।

**घृतस्पृश्** (घ्यू छुनेवाला ।) घृतं स्पृशति, यस अर्थमा 'घृत+ङस्' पूर्वमा हुने स्पृश् धातुदेखि "स्पृशोऽनुदके क्विन्"ले क्विन् प्रत्यय भयो, सर्वापहारी लोप भयो, 'घृत+ङस्+स्पृश्' को समा भयो, विभक्तिको लुक् भयो, घृतस्पृश् शब्द बन्यो ।

**घृतस्पृक्/ग्**- घृतस्पृश् शब्ददेखि सु आयो, 'घृतस्पृश्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, 'घृतस्पृश्' भयो, "व्रश्चभ्रस्ज०"ले षत्व भयो, "झलो जशोऽन्ते"ले जश्त्व भयो, ड् भयो, "क्विन्प्रत्ययस्य कुः"ले कुत्व भयो, 'घृतस्पृग्' भयो, "वाऽवसाने"ले चर्त्व भयो, 'घृतस्पृक्' नभएमा 'घृतस्पृग्' सिद्ध भयो ।

**घृतस्पृशौ, घृतस्पृशः**- औ जस्मा घृतस्पृशौ, घृतस्पृशः, हुन्छ । भ्याम्, भिस्मा 'घृतस्पृग्भ्याम्', 'घृतस्पृग्भिः' हुन्छ । सुप्मा घृतस्पृश्का तालव्य शकारका स्थानमा "व्रश्चभ्रस्जसृजमृजयजराजभ्राजच्छशां षः"ले षत्व भएपछि जश्त्व, चर्त्व भएर 'घृतस्पृक्षु' हुन्छ । यसरी अजादि हलादि सबै विभक्तिमा घृतस्पृश् शब्द तादृश् शब्द जस्तै हुन्छ ।

दधृक्, दधृग् । दधृषौ । दधृग्भ्याम् ॥ रत्नमुट्,रत्नमुड् । रत्नमुषौ । रत्नमुड्भ्याम् ॥
षट्, षड् । षड्भिः । षड्भ्यः ।

---

घृतस्पृश् शब्दका रूप-

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र. | घृतस्पृक्-ग् | घृतस्पृशौ | घृतस्पृशः |
| द्वि. | घृतस्पृशम् | घृतस्पृशौ | घृतस्पृशः |
| तृ. | घृतस्पृशा | घृतस्पृग्भ्याम् | घृतस्पृग्भिः |
| च. | घृतस्पृशे | घृतस्पृग्भ्याम् | घृतस्पृग्भ्यः |
| प. | घृतस्पृशः | घृतस्पृग्भ्याम् | घृतस्पृग्भ्यः |
| ष. | घृतस्पृशः | घृतस्पृशोः | घृतस्पृशाम् |
| स. | घृतस्पृशि | घृतस्पृशोः | घृतस्पृक्षु |
| सं. | हे घृतस्पृक्-ग् ! | हे घृतस्पृशौ ! | हे घृतस्पृशः ! |

**मूर्धन्य षकारान्त शब्द दधृष्-** (प्रगल्भ, ढीटो) धृष्णोति, यस अर्थमा "ऋत्विगदधृक्०"ले क्विन् भयो, निपातनाद् द्वित्व र अभ्यास कार्य भयो, क्विन्को सर्वापहारिलोप भयो, दधृष् शब्द बन्यो ।

**दधृक्-ग्-** दधृष् शब्ददेखि सु आयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, षकारको जश्त्व भयो, 'दधृड्' भयो, कुत्व भयो, 'दधृग्' चर्त्व भयो, 'दधृक्' भयो । चर्त्व नभएमा 'दधृग्' यी दुई रूप सिद्ध भए ।

**दधृषौ-** दधृष् शब्ददेखि औ आयो, 'दधृषौ' सिद्ध भयो ।

**दधृग्भ्याम्-** दधृष् शब्ददेखि भ्याम् आयो, षकारको जश्त्व, कुत्व भयो, 'दधृग्भ्याम्' सिद्ध भयो । अजादि विभक्तिमा विभक्ति संयोग र आवश्यक स्थलमा रुत्व, विसर्ग हलादिमा जश्त्व, कुत्व बाहेक विशेष कार्य छैन । सुप्मा जश्त्व, कुत्व, चर्त्व, क्षत्व भएर 'दधृक्षु' रूप हुन्छ ।

**रत्नमुष्** (रत्न चोर्ने व्यक्ति) **रत्नमुट्/ड्-** रत्नमुष् शब्ददेखि सु आयो, रत्नमुष् स् भयो, "हल् ङ्याब्भ्यो०"ले सकारको लोप भयो "झलां जशोऽन्ते"ले जश्त्व भयो, चर्त्व भयो, 'रत्नमुट्' चर्त्व नभएका 'रत्नमुड्' दुई रूप सिद्ध भए ।

अजादि विभक्तिमा विशेष कार्य छैन । हलादि विभक्तिमा षकारको जश्त्व भएर डकार हुन्छ । सुप्मा जश्त्व भएपछि वैकल्पिक धुट् आगम, चर्त्व यो विशेष कार्य छ ।

**षष्शब्द-** (छ सङ्ख्या वाचक) नित्य बहुवचनान्त छ ।

**षट्/षड्=** षष् शब्ददेखि जस् आयो, 'षष्+अस्' भयो, "ष्णान्ता षट्"ले षष् यसलाई षट्संज्ञा भयो, "षड्भ्यो लुक्"ले अस्को लुक् भयो, पदसंज्ञा भयो, "झलां झशोऽन्ते" षकारको जश्त्व भएर डकार भयो, "वाऽवसाने"ले वैकल्पिक चर्त्व भयो, 'षट्', चर्त्व नभएको पक्षमा 'षड्' यी दुई रूप भए ।

**षड्भिः-** षष् शब्ददेखि भिस् आयो, 'षष्+भिस्' भयो, पदसंज्ञा भयो, जश्त्व भयो, 'षड्भिस्' भयो, रुत्व विसर्ग भयो, 'षड्भिः' सिद्ध भयो ।

**षड्भ्यः-** षष् शब्ददेखि भ्यस् आयो, "झलां जशोऽन्ते"ले जश्त्व भयो, रुत्व, विसर्ग भयो, भयो, 'षड्भ्यः' सिद्ध भयो ।

**षण्णाम्-** षष् शब्ददेखि आम् आयो, 'षष्+आम्' भयो, "ष्णान्ता षट्"ले षष्लाई षट्संज्ञा भयो, "षट्चतुर्भ्यश्च"ले आम्को नुट् भयो, 'षष्+नाम्' भयो, नाम् यो हलादि विभक्ति पर हुनाले

षण्णाम् । षट्सु ॥ रुत्वं प्रति षत्वस्यासिद्धत्वात्ससजुषो रुरिति रुत्वम् ॥

**३५०. र्वोरुपधाया दीर्घ इकः ८ । २ । ७६ ॥**

रेफवान्तयोर्धात्वोरुपधाया इको दीर्घः पदान्ते । पिपठीः । पिपठिषौ । पिपठीर्भ्याम् ।

**३५१. नुंम्विसर्जनीयशर्व्यवायेऽपि ८ । ३ । ५८ ॥**

एतैः प्रत्येकं व्यवधानेऽपि इण्कुभ्यां परस्य सस्य मूर्धन्यादेशः । ष्टुत्वेन पूर्वस्य षः । पिंपठीष्षु, पिपठीःषु ॥

---

पदसंज्ञा भयो, "झलां जशोऽन्ते"ले जश्त्व भएर षकारको डकार भयो, 'षड्+नाम्' भयो, "अनाम्" भनेकोले "नपदान्ताट्टोरनाम्"ले ष्टुत्व निषेध भएन । "ष्टुनाष्टुः"ले ष्टुत्व भयो, 'षड्णाम्' सिद्ध भयो । षड्का डकारका स्थानमा "यरोऽनुनासिके०"ले वैकल्पिक अनुनासिक पाएकोमा "प्रत्यये भाषायां०" यस वार्तिकले यर्को सवर्ण अनुनासिक नित्य हुँदा णकार भयो, 'षण्णाम्' सिद्ध भयो ।

**षट्त्सु/षट्सु-** षष् शब्ददेखि सुप् आयो, 'षष्+सु' पदसंज्ञा, जश्त्व भयो, 'षड्+सु' "ष्टुनाष्टुः"ले पाएको ष्टुत्व "न पदान्ताट्टोरनाम्"ले निषेध भयो । "ड:सि धुट्"ले धुट्आगम भयो, डकार धकार दुवैको "खरि च"ले चर्त्व भयो, 'षट्त्सु' धुट् नभएको पक्षमा पनि चर्त्व भयो, 'षट्सु' यी दुई रूप सिद्ध भए ।

**पिपठिष्-** (पढ्नको इच्छा गर्ने व्यक्ति)

पठितुम् इच्छति, यस अर्थमा "धातोः कर्मणः०"ले पठ् धातुदेखि सन् प्रत्यय भयो, द्वित्व र अभ्यास कार्य, इत्व षत्व भएपछि 'पिपठिष' भयो, पिपठिषलाई "सनाद्यन्ता०"ले धातुसंज्ञा भयो, 'पिपठिष'देखि क्विप् प्रत्यय भयो, सर्वापहारी लोप भयो, "अतो लोपः"ले अकारको लोप भयो, 'पिपठिष्'शब्द बन्यो ।

**रुत्वं** प्रतीति-रुत्वका दृष्टिमा षत्व असिद्ध हुने हुनाले "ससजुषो रुः"ले रुत्व हुन्छ ।

**र्वोरिति**– रेफ र वकार अन्तमा हुने धातुका उपधामा रहेका इक्का स्थानमा दीर्घ होस् पदान्तमा ।

**पिपठीः-** पिपठिष् शब्ददेखि सु आयो, 'पिपठिष्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, 'पिपठिष्' भयो, पिपठिष्लाई "प्रत्ययलोपे०" लाएर पदसंज्ञा भयो, रुत्व, (८।३।२) का दृष्टिमा षत्व गर्ने सूत्र (८।३।५९) असिद्ध भएकोले पिपठिष्को मूर्धन्य षकारलाई दन्त्य सकार जस्तै देख्यो र "ससजुषो रुः" (८।३।२) ले रुत्व भयो, 'पिपठिर्' भयो । पिपठिर् यहाँ रेफ अन्तमा हुने धातु हुनाले "र्वोरुपधाया दीर्घ इकः"ले उपधाको इक्- इकारका स्थानमा दीर्घ ई भयो, 'पिपठीर्' भयो, विसर्ग भयो, 'पिपठीः' सिद्ध भयो ।

**पिपठिषौ**– पिपठिष् शब्ददेखि औ आयो, वर्णमेलन भयो, 'पिपठिषौ' सिद्ध भयो ।

**पिपठीर्भ्याम्**– पिपठिष् शब्ददेखि तृतीया एकवचन भ्याम् आयो, पदसंज्ञा भएपछि रुत्व प्रति षत्व असिद्ध हुनाले रुत्व भयो "र्वोरुपधाया०"ले उपधादीर्घ भयो, 'पिपठीर्भ्याम्' सिद्ध भयो । यस्तै प्रकारले हलादि विभक्तिमा रुत्व र उपधादीर्घ हुन्छ ।

**नुम्विसर्जनीयेति**– नुम् स्थानिक अनुस्वार, विसर्ग र शर् प्रत्याहारले एक एक गरेर व्यवधान भएमा पनि इण् प्रत्याहार र कवर्गदेखि पर रहेका दन्त्य सकारका स्थानमा मूर्धस्थानी आदेश होस् ।

**पिपठीष्षु/पिपठीःषु-** पिपठिष् शब्ददेखि सुप् आयो, 'पिपठिष्+सु' भयो, पूर्ववत् रुत्व भयो, "र्वोरुपधाया०"ले इकारका स्थानमा दीर्घ ईकार भयो, 'पिपठीः+सु' भयो, "विसर्जनीयस्य सः"ले विसर्गका स्थानमा दन्त्य सकार पाएकोमा बाधेर "वा शरि"ले विसर्गका स्थानमा विकल्पले विसर्ग भयो, 'पिपठीःसु' विसर्ग नभएका पक्षमा "विसर्जनीयस्य सः"ले दन्त्य सकार भयो, 'पिपठीस्सु' भयो, दुवै पक्षमा "नुंम्विसर्जनीयशर्व्यवायेऽपि"ले विसर्ग, र शर्ले व्यवधान् भए पनि

चिकीः । चिकीर्षौ । चिकीर्भ्याम् । चिकीर्षु ॥

इकारदेखि पर रहेको सुको सकारका स्थानमा षकार भयो, विसर्ग भएको पक्षमा 'पिपठीः षु' यो रूप सिद्ध भयो । सकार भएका पक्षमा 'पिपठीस्षु' यहाँ ष्टुत्व भएर पूर्वमा रहेका दन्त्य सकारका स्थानमा मूर्धन्य षकार भयो, 'पिपठीष्षु' यो रूप सिद्ध भयो ।

**पिपठिष् शब्दका रूप-**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र. | पिपठीः | पिपठिषौ | पिपठिषः |
| द्वि. | पिपठिषम् | पिपठिषौ, | पिपठिषः |
| तृ. | पिपठिषा, | पिपठीर्भ्याम् | पिपठीर्भिः |
| च. | पिपठिषे | पिपठीर्भ्याम् | पिपठीर्भ्यः |
| प. | पिपठिषः | पिपठीर्भ्याम् | पिपठीर्भ्यः |
| ष. | पिपठिषः | पिपठिषोः | पिपठिषाम् |
| स. | पिपठिषि | पिपठिषोः | पिपठीःषु/पिपठीष्षु |
| सं. | हे पिपठीः ! | हे पिपठिषौ ! | हे पिपठिषः ! |

**चिकीर्ष्** (गर्नको इच्छा गर्ने व्यक्ति)

कर्तुमिच्छति, यस अर्थमा कृ धातुदेखि सन् भयो, "एकाच०"ले इट् निषेध भयो, द्वित्व, अभ्यासकार्य भयो, 'चिकृ+ष' भयो, "अज्झनगमां०"ले दीर्घ भयो, 'चिकॄ+ष' भयो, "इको झल्"ले सन् कित् भएकोले गुण निषेध भयो, "ॠत् इद् धातोः"ले 'इर्' भयो, षत्व भयो, 'चिकिर्ष' भयो, "हलि च"ले उपधादीर्घ भयो, 'चिकीर्ष' धातु भयो । चिकीर्षधातु देखि क्विप्प्रत्यय, सर्वापहारी लोप भयो, "अतो लोपः"ले अकारलोप भएपछि 'चिकीर्ष्'शब्द बन्यो ।

**चिकीः**- चिकीर्ष् शब्ददेखि सु आयो, 'चिकीर्ष+स्' भयो, "हल्ङ्याब्भ्यो०"ले सुको लोप भयो, षत्व असिद्ध हुनाले चिकीर्ष्को षकारलाई दन्त्ये सकार देखेर "रात्सस्य" नियम लगाएर संयोगान्तलोप भयो, रेफको विसर्ग भयो, 'चिकीः' सिद्ध भयो ।

**चिकीर्षौ**- चिकीर्ष् शब्ददेखि औ आयो, 'चिकीर्षौ' सिद्ध भयो । चिकीर्ष् शब्दको की दीर्घ नै हुनाले अजादि विभक्तिमा पनि दीर्घ'चिकीर्षौ', 'चिकीर्षः', इत्यादि रूप हुन्छन् । पिपठिष् शब्दमा ठिको इकार ह्रस्व छ अतः पिपठिषौ, पिपठिषः, यस्ता रूप हुन्छन् । हलादि विभक्तिमा पनि पिपठिष्मा लाग्ने "र्वोरुपधाया दीर्घ०" यो सूत्र यहाँ चाहिंदैन ।

**चिकीर्भ्याम्**- चिकीर्ष् शब्ददेखि भ्याम् आयो, 'चिकीर्ष्+भ्याम्' भयो, पूर्ववत् "रात्सस्य" लाएर "संयोगान्त" सकारको लोप भयो, 'चिकीर्भ्याम्' सिद्ध भयो ।

**चिकीर्षु**- चिकीर्ष् शब्ददेखि सुप् आयो, मूर्धन्य षकारलाई दन्त्य सकार देखेर "रात्सस्य" लगाएर पूर्ववत् संयोगान्तलोप भयो, 'चिकीर्'का रेफका स्थानमा "खरवसानयोः०"ले विसर्ग पाएमा "रोः सुपि"ले निषेध भयो, "आदेशप्रत्यययोः"ले सुका सकारको षत्व भयो, 'चिकीर्षु' सिद्ध भयो ।

**सकारान्त शब्द-**

**विद्वस्** (विद्वान्) **विद्वान्**- विद्वस् शब्ददेखि सु आयो, 'विद्वस्+स्' भयो, "उगिदचां०"ले नुम्

विद्वान् । विद्वांसौ । हे विद्वन् ॥

**३५२. वसोः सम्प्रसारणम् ६ । ४ । १३१ ॥**

वस्वन्तस्य भस्य सम्प्रसारणं स्यात् । विदुषः । वसुस्रंस्विति दः । विद्वद्भ्याम् ॥

---

भयो, "सान्तमहतः संयोगस्य"ले नकारका उपधा विद्वका अकारका स्थानमा दीर्घ आकार भयो, 'विद्वान्स्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, अर्को सकारको संयोगान्त लोप भयो, 'विद्वान्' सिद्ध भयो ।

**विद्वांसौ–** विद्वस् शब्ददेखि औ आयो, 'विद्वस्+औ' भयो, "उगिदचां०"ले नुम् भयो, 'विद्वन्स्+औ' भयो, "सान्तमहतः०"ले दीर्घ भयो, 'विद्वान्स्+औ' भयो नकारको अनुस्वार भयो, वर्णमेलन भयो, 'विद्वांसौ' रूप सिद्ध भयो । जस्, अम्, औट्मा पनि यस्तै गरी रूप सिद्ध हुन्छन् ।

**हे विद्वन्–** विद्वस् शब्ददेखि सम्बोधन अर्थमा प्रथमाको एकवचन सु आयो, 'विद्वस्+स्' भयो, "उगिदचां०"ले नुम् भयो, 'विद्वन्स्+स्' यहाँ सुका सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, अर्को सकारको संयोगान्तमा लोप भयो, 'विद्वन्' हे शब्दको पूर्व प्रयोग भयो, 'हे विद्वन्' ।

**वसोरिति–** वसुप्रत्यय अन्तमा भसंज्ञक अङ्गका स्थानमा संप्रसारण होस् ।

**विदुषः–** विद्वस् शब्ददेखि शस् आयो 'विद्वस्+अस्' भयो, "वसोः सम्प्रसारणम्"ले विद्वस् यहाँ वस्का वकारका स्थानमा संप्रसारण उकार भयो, 'विदु+अस्+अस्' भयो, "संप्रसारणाच"ले पूर्वरूप भयो, 'विदुस+अस्' भयो, पुनः वकारको सम्प्रसारण पाएको "न सम्प्रसारणे०" निषेध भएपछि वर्णमेलन भयो । 'विदुसस्' भयो, बीचका सकारको "आदेशप्रत्यययोः"ले 'षत्व' भयो, अन्तिम सकारको रुत्व, विसर्ग भयो, 'विदुषः' सिद्ध भयो यसैगरी अरू टा आदि अजादि विभक्तिमा संप्रसारण पूर्वरूप पुनः वकारको सम्प्रसारण पाएकोमा निषेध, वर्णमेलन भएपछि दन्त्य सकारको "आदेशप्रत्यययोः"ले षत्व हुन्छ ।

**विद्वद्भ्याम्–** विद्वस् शब्ददेखि भ्याम् आयो, 'विद्वस्+भ्याम्' भयो, पदसंज्ञा भयो, विद्वस्का सकारका स्थानमा "ससजुषोः०"ले पाएको रुत्वलाई बाधेर "वसुस्रंसु०"ले दकार भयो, 'विद्वद्भ्याम्' सिद्ध भयो । भिस् र भ्यस्मा पनि यही प्रक्रिया हुन्छ । सुप्मा दत्वपछि चर्त्व पनि भएर तकार हुन्छ र 'विद्वत्सु' रूप बन्दछ ।

**विद्वस् शब्दका रूप**

| **विभक्ति** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| **प्र.** | विद्वान् | विद्वांसौ | विद्वांसः |
| **द्वि.** | विद्वांसम् | विद्वांसौ | विदुषः |
| **तृ.** | विदुषा | विद्वद्भ्याम् | विद्वद्भिः |
| **च.** | विदुषे | विद्वद्भ्याम् | विद्वद्भ्यः |
| **पं.** | विदुषः | विद्वद्भ्याम् | विद्वद्भ्यः |
| **ष.** | विदुषः | विदुषोः | विदुषाम् |
| **स.** | विदुषि | विदुषोः | विद्वत्सु |
| **सं.** | हे विद्वन् ! | हे विद्वांसौ ! | हे विद्वांसः ! |

**३५३. पुंसोऽसुङ् ७ । १ । ८९ ॥**

सर्वनामस्थाने विविक्षिते पुंसोऽसुङ् स्यात् । पुमान् । हे पुमन् । पुमांसौ । पुंसः । पुम्भ्याम् । पुंसु ॥

---

**पुसोऽसुङिति–** सर्वनामस्थानको विवक्षामा पुंस् शब्दका स्थानमा असुङ् आदेश होस् ।

**पुंस्–** (पुरूष) । **पुमान्–** सुको विवक्षमा पुंस् शब्दका स्थानमा "पुंसोऽसुङ्"ले असुङ् आदेश भयो, ङकारको "हलन्त्यम्"ले इत्संज्ञा भयो । उकारको "उपदेशेऽजनुनासिक इत्"ले इत्संज्ञा भयो दुवै वर्णको "तस्य लोपः"ले लोप भयो, अस् बाँकी रह्यो । अस् यो "अलोऽन्त्यस्य"ले सकारका स्थानमा पाएकोमा बाधेर "अनेकाल शित्०"ले पूरै पुंस्का स्थानमा पायो, त्यसलाई बाधेर "ङिच्च" लाएर अन्त्य अल् सकारका स्थानमा अस् भयो, 'पुं+अस्' भयो, "निमित्तापाये नैमित्तिकस्याप्यपायः" यो परिभाषा लाएर अनुस्वारको मकार भयो, 'पुमस्' भयो, सु आयो, 'पुमस्+स्' यहाँ "उगिदचां सर्वनामस्थाने०"ले पुमस्को नुम् आगम भयो, 'पुमन्स्+स्' भयो, "सान्तमहतः०"ले पुमका अकारका स्थानमा दीर्घआकार भयो, 'पुमान्+स+स्' भयो, सुका सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, अर्को सकारको संयोगान्तलोप भयो, 'पुमान्' सिद्ध भयो ।

**हे पुमन्–** पुंस् शब्दका स्थानमा संबुद्धिको विवक्षामा पूर्ववत् असुङ आदेश भयो, 'पुमस्' भयो, सु आयो, 'पुमस्+स्' भयो, "उगिदचां०"ले नुम् भयो, 'पुमन्स्+स्' भयो, पूर्ववत् सुका सकारको संयोगान्त लोप भयो, हे शब्दको पूर्वप्रयोग भयो, 'हे पुमन्' सिद्ध भयो ।

**पुमांसौ–** औको विवक्षामा पुंस् शब्दका सकारका स्थानमा "पुंसोऽसुङ्"ले असुङ् आदेश भयो, औ आयो, 'पुमस्+औ' भयो, नुम् भयो, "सान्तमहतः०"ले दीर्घ भयो, नकारको अनुस्वार भयो, 'पुमांसौ' सिद्ध भयो । सर्वनामस्थानमा यस्तै साधन प्रक्रिया हुन्छ ।

**पुंसः–** (शस्को विवक्षामा शस् सर्वनामस्थान नहुनाले असुङ् आदेश भएन) पुंस् शब्द देखि शस् आयो, 'पुंस्+अस्'- 'पुंसस्' भयो, रुत्व, विसर्ग भयो, 'पुंसः' सिद्ध भयो ।

**पुंभ्याम्–** पुंस् शब्ददेखि भ्याम् आयो, पदसंज्ञा भयो, "संयोगान्तस्य लोपः"ले सकारको लोप भयो, सकारको लोप भएपछि अनुस्वारको मकार भयो, मकारका स्थानमा "मोऽनुस्वारः"ले अनुस्वार भयो, "वा पदान्तस्य"ले वैकल्पिक परसवर्ण भयो, 'पुम्भ्याम्' परसवर्ण नभएको पक्षमा 'पुंभ्याम्' यी दुई रूप भए ।

**पुंसु–** पुंस् शब्ददेखि सुप् आयो, सकारको संयोगान्तलोप भयो 'पुंसु' सिद्ध भयो ।

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र. | पुमान् | पुमांसौ | पुमांसः |
| द्वि. | पुमांसम् | पुमांसौ | पुंसः |
| तृ. | पुंसा | पुम्भ्याम्/पुंभ्याम् | पुम्भिः/पुंभिः |
| च. | पुंसे | पुम्भ्याम्/पुंभ्याम् | पुम्भ्यः/पुंभ्यः |
| पं. | पुंसः | पुम्भ्याम्/पुंभ्याम् | पुम्भ्यः/पुंभ्यः |
| ष. | पुंसः | पुंसोः | पुंसाम् |
| स. | पुंसि | पुंसोः | पुंसु |
| सं. | हे पुमन् ! | हे पुमांसौ ! | हे पुमांसः ! |

ऋदुशनेत्यनङ् । उशना । उशनसौ । **वा.**(अस्य संबुद्धौ वानङ्, नलोपश्च वा वाच्यः) । हे उशन, हे उशनन्, हे उशनः । हे उशनसौ । उशनोभ्याम् । उशनस्सु ॥ अनेहा । अनेहसौ । हे अनेहः ॥

---

**ऋदुशनेति**– उशनस् शब्दमा "ऋदुशनस्पुरूदंसोऽनेहसां च" यो सूत्रले अनङ्आदेश हुन्छ ।

**उशनस्**– (शुक्र/दैत्यगुरु) ।

**उशना**– उशनस् शब्ददेखि सु आयो, 'उशनस्+स्' भयो, "ऋदुशनस्०"ले अनङ्भयो, 'उशन+अन्+स्', "अतो गुणे"ले पररूप भयो, 'उशनन्+स्' भयो, "सर्वनामस्थाने०"ले दीर्घ भयो, 'उशनान्+स्' भयो, सकारको "हल्ङ्याभ्यो:०"ले लोप भयो, नकारको "न लोपः०"ले लोप भयो, 'उशना' सिद्ध भयो ।

**उशनसौ**– उशनस् शब्ददेखि औ आयो, 'उशनस्+औ'-'उशनसौ' सिद्ध भयो । यस्तै प्रकारले अरू अजादि विभक्तिमा पनि विशेष प्रक्रिया छैन । आवश्यक स्थलमा रुत्व, विसर्ग मात्र हुन्छ ।

(**वा.**) **अस्येति**– उशनस् शब्दका स्थानमा संबुद्धि पर भएमा विकल्पले अनङ्आदेश होस्, नकारको लोप पनि विकल्पले होस् ।

**हे उशन/हे उशनन्/हे उशनः** उशनस् शब्ददेखि संबोधन अर्थमा प्रथमाको एकवचन सु आयो, 'उशनस्+स्' भयो, "अस्य संबुद्धौ०" यस वार्तिकले अनङ् आदेश भयो, अनुवन्धलोप भयो, ङित्वात् अन्त्य अल् सकारका स्थानमा अन् भयो । "अतो गुणे"ले पररूप भयो, 'उशनन्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, 'उशनन्' भयो । उशनन्का नकारको "नलोपः प्रातिपदिकान्तस्य"ले नित्य लोप पाएमा "नलोपश्च वा वाच्यः"ले नकारको लोप पनि विकल्पले होस् भनेकोले नकारको वैकल्पिक लोप भयो, हे शब्दको पूर्व प्रयोग भयो, 'हे उशन' सिद्ध भयो । नलोप नभएको पक्षमा 'उशनन्' यस्तै छ, हे शब्दको पूर्व प्रयोग भयो, 'हे उशनन्' सिद्ध भयो । अनङ आदेश नभएको पक्षमा 'उसनस्+स्' यस्तै छ, सकारको "हल्ङ्याब्यो०"ले लोप भयो, अर्को सकारको रुत्व, विसर्ग भयो, हे शब्दको पूर्वप्रयोग भयो, 'हे उशनः' यसरी तीन रूप भए ।

**उशनोभ्याम्**– उशनस् शब्ददेखि भ्याम् आयो, उशनस् भ्याम् सकारको "ससजुषो रुः"ले रुत्व "हशिच"ले उत्व भयो, 'उशन+उ+भ्याम्' भयो, गुण भयो, 'उशनोभ्याम्' सिद्ध भयो । यसैगरी सुप्बाहेक अरू हलादि विभक्तिमा पनि रूप बन्छन् । सुप्मा रुत्व, विसर्ग भएपछि "वा शरि", "विसर्जनीयस्य सः" लाएर 'उशनःसु', 'उशनस्सु' दुई रूप हुन्छन् ।

**अनेहस्**– (काल/समय) **अनेहा**– अनेहस् शब्ददेखि प्रथमाको एकवचन सु आयो, 'अनेहस्+स्' भयो, "ऋदुशनस्पुरूदंसोऽनेहसां च" अनेहस्का सकारका स्थानमा अनङ् आदेश अन् भयो, पररूप भयो, 'अनेहन्+स्' भयो, "सर्वनामस्थाने०"ले उपधादीर्घ भयो, 'अनेहान्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले र नकारको "नलोपः०"ले लोप भयो, 'अनेहा' सिद्ध भयो ।

**अनेहसौ**– अनेहस् शब्ददेखि औ आयो, 'अनेहस्+औ'- 'अनेहसौ' सिद्ध भयो । अजादि विभक्तिमा विभक्ति संयोग भएपछि आवश्यक स्थलमा रुत्व, विसर्गबाहेक अरू विशेष कार्य केही छैन । सुप्मा उशनस् शब्दमा जस्तै दुई रूप हुन्छन् ।

**हे अनेहः**– अनेहस् शब्ददेखि संबोधन अर्थ बुझिंदामा प्रथमाको एकवचन सु आयो, 'अनेहस्+स्' भयो, सुका सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, अनेहस्का सकारको रुत्व, विसर्ग भयो, हे शब्दको पूर्व प्रयोग भयो, 'हे अनेहः' सिद्ध भयो । अनेहस् शब्दको सम्बुद्धिमा बाहेक अरू विभक्तिमा उशनस् शब्दमा जस्तै साधन प्रक्रिया हुन्छन् र रूप पनि संबुद्धि बाहेक अन्यत्र समान हुन्छन् ।

---

वेधाः । वेधसौ । हे वेधः । वेधोभ्याम् ॥

**३५४. अदस औ सुलोपश्च ७ । २ । १०७ ॥**

अदस औकारोऽन्तादेशः स्यात् सौ परे सुलोपश्च । तदोरिति सः । असौ । त्यदाद्यत्वम् । पररूपत्वम् । वृद्धिः ॥

---

**वेधस्-** (ब्रह्मा) **वेधाः-** वेधस् शब्ददेखि सु आयो, 'वेधस्+स्' भयो, धातुभिन्न अस् अन्त हुनाले "अत्वसन्तस्य चाधातोः"ले वेधस्का उपधाका स्थानमा दीर्घ भयो, 'वेधास्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, वेधास्का सकारको रुत्व, विसर्ग भयो, 'वेधाः' सिद्ध भयो ।

**वेधसौ-** वेधस् शब्ददेखि औ आयो, वर्णमेलन भयो, 'वेधसौ' सिद्ध भयो ।

**हे वेधः-** वेधस् शब्ददेखि संबोधन अर्थमा प्रथमाको एकवचन सु आयो, । 'वेधस्+स्' भयो, सकारको हल्ङ्यादि सूत्रले लोप भयो, वेधस्का सकारको रुत्व, विसर्ग भयो, 'वेधः' हे शब्दको पूर्व प्रयोग भयो, 'हे वेधः' सिद्ध भयो ।

**वेधोभ्याम्-** वेधस् शब्ददेखि तृतीयाको द्विवचन भ्याम् आयो, सकारका स्थानमा रुत्व, उत्व, गुण भयो, 'वेधोम्याम्' सिद्ध भयो । सुमाबाहेक अन्यत्र वेधस् शब्दका रूप, अनेहस् शब्दका जस्तै हुन्छन् ।

**वेधस् शब्दका रूप-**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | वेधाः | वेधसौ | वेधसः | **द्वि.** | वेधसम् | वेधसौ | वेधसः |
| **तृ.** | वेधसा | वेधोभ्याम् | वेधोभिः | **च.** | वेधसे | वेधोभ्याम् | वेधोभ्यः |
| **पं.** | वेधसः | वेधोभ्याम् | वेधोभ्यः | **ष.** | वेधसः | वेधसोः | वेधसाम् |
| **स.** | वेधसि | वेधसोः | वेधःसु/स्सु | **सं.** | हे वेधः ! | हे वेधसौ ! | हे वेधसः ! |

यस्तै प्रकारले चन्द्रमस् (चन्द्रमा), सुमेधस् (राम्रो बुद्धि भएको), प्रचेतस् (वरुण), महौजस् (महाबली), हिरण्यरेतस् (अग्नि), दिवौकस् (देवता), वनौकस् (भालु), स्वर्गौकस् (देवता), सुप्रजस् (राम्रा सन्तान हुने व्यक्ति), सुमनस् (असल मन भएको व्यक्ति, देवता, फूल) शब्दका पनि रूप हुन्छन् ।

**अदस्-** (यो/समीपस्थ व्यक्ति)

**अदस् इति-** अदस् शब्दका अन्त्य अल् (सकार)का स्थानमा औकार आदेश होस् सु पर भएमा, सुको लोप पनि होस् ।

**तदोरिति-** "तदोः सः सावनन्त्ययोः" यो सूत्रले दकारका स्थानमा सकार हुन्छ ।

**असौ-** अदस् शब्ददेखि सु आयो, 'अदस्+स्' भयो, "त्यदादीनामः"ले अत्व पायो, त्यसलाई बाधेर "अदस औ सुलोपश्च"ले अदस्का सकारका स्थानमा औ भयो, सुको पनि लोप भयो, 'अद+औ' भयो, "वृद्धिरेचि"ले वृद्धि भयो, अदौ, "तदोः सः सावनन्त्ययोः"ले दकारका स्थानमा सकार भयो, 'असौ' सिद्ध भयो ।

**त्यदाद्यत्वमिति-** औमा "त्यदादीनामः"ले अत्व हुन्छ पररूप हुन्छ अनि वृद्धि हुन्छ ।

**३५५. अदसोऽसेर्दादु दो मः ८ । २ । ८० ॥**

अदसोऽसान्तस्य दात्परस्य ऊदूतौ स्तो दस्य मश्च । आन्तरतम्याद्ध्रस्वस्य उः, दीर्घस्य ऊः । अमू । "जसः शी" । गुणः ॥

**३५६. एत ईद् बहुवचने ८ । २ । ८१ ॥**

अदसो दात्परस्यैत ईद्दस्य च मो बह्वर्थोक्तौ । अमी । पूर्वत्रासिद्धमिति विभक्तिकार्यं प्राक् पश्चादुत्वमत्वे । अमुम् । अमू । अमून् ।

---

**अदसोऽसेरिति**– दन्त्य सकार अन्तमा नहुने अदस् शब्दका दकारदेखि पर रहेका अच्का स्थानमा ह्रस्व उकार र दीर्घ ऊकार होउन् दकारका स्थानमा मकार पनि होस् ।

**आन्तरतम्यादिति**– "स्थानेऽन्तरतमः" लगाएर मात्राको आन्तरतम्यले ह्रस्व अच्का स्थानमा ह्रस्व उकार दीर्घअच्का स्थानमा दीर्घ ऊकार हुन्छ ।

**अमू**– अदस् शब्ददेखि औ आयो, "त्यदादीनामः"ले अत्व पररूप भयो, 'अद+औ' भयो, वृद्धि भयो, 'अदौ' भयो, दकार देखि पर रहेको औकारका स्थानमा "अदसोऽसेर्दादु दो मः"ले ह्रस्व उकार दीर्घ ऊकार दुवै पायो, पाएमा "स्थानेऽन्तरतमः" लाएर स्थान, अर्थ, गुणबाट नियम हुन नसकेपछि प्रमाणमा जाँदा अदौ यहाँ स्थानीको औकार द्विमात्रिक छ र औका स्थानमा द्विमात्रिक दीर्घ ऊकार आदेश भयो, दकारका स्थानमा मकार भयो, 'अमू' सिद्ध भयो ।

**जसःशीति**– "त्यदादीनामः"ले अत्व र पररूप भएपछि जस्का स्थानमा 'शी' हुन्छ, गुण हुन्छ ।

**एत ईदिति**– अदस् शब्दका दकारदेखि पर रहेका एकारका स्थानमा दीर्घ ईकार होस्, दकारका स्थानमा मकार पनि होस् अदस् शब्दले बहुत्वसंख्याविशिष्ट रूप अर्थलाई कहे छँदामा ।

**अमी**– अदस् शब्ददेखि जस् आयो, 'अदस्+अस्' भयो, "त्यदादीनामः"ले अदस्का सकारका स्थानमा अकार भयो, पररूप भयो, जस्का स्थानमा शीआदेश भयो, गुण भयो, 'अदे' भयो । अदे यहाँ यो "अदसोऽसेर्दादु दो मः"ले ऊत्वमत्व पायो, त्यसलाई बाधेर "एत ईब्दहुवचने"ले अदेका एकारका स्थानमा दीर्घ ईकार भयो । दकारका स्थानमा मकार भयो, 'अमी' सिद्ध भयो ।

**पूर्वत्रासिद्धमिति**– उत्वमत्व गर्ने सूत्र त्रिपादी र विभक्तिकार्य गर्ने सूत्र सपादी हुनाले "पूर्वत्रासिद्धम्" लाएर उत्वमत्व गर्ने सूत्र असिद्ध हुने हुँदा पहिले विभक्तिकार्य हुन्छ, पछि उत्व मत्व हुन्छ ।

**अमुम्**– अदस् शब्ददेखि अम् आयो, अत्व, पररूप भयो, 'अद+अम्' भयो, "अकः सवर्णे दीर्घः"ले दीर्घ पाएकोमा बाधेर "अतो गुणे"ले पररूप पायो, त्यसलाई बाधेर "प्रथमयोः०"ले पूर्वसवर्ण दीर्घ पायो, त्यसलाई पनि बाधेर "अमि पूर्वः"ले पूर्वरूप भयो, 'अदम्'भयो, "अदसोऽसेर्दादु दो मः"ले पूर्ववत् अदका अकारका स्थानमा एकमात्रिक उकार भयो, दकारका स्थानमा मकार भयो, 'अमुम्' यो रूप सिद्ध भयो ।

**अमू**– अदस् शब्ददेखि औट् आयो, 'अद+औ' भयो औमा जस्तै सबै प्रक्रिया भयो, 'अमू' सिद्ध भयो ।

यस्तै प्रकारले सबै विभिक्तमा पहिले विभक्तिकार्य गरेपछि उत्वमत्व अथवा ईत्व-मत्व गरेर रूप सिद्ध हुन्छन् । टामा भने उत्व मत्व पहिले हुन्छ ।

**अमून्**– अदस् शब्ददेखि शस् आयो, 'अदस्+अस्' भयो, सबै बाध्यबाधकभावपछि "प्रथमयोः०"ले पूर्वसवर्ण दीर्घ भयो, 'अदास्' भयो, "तस्माच्छसोः०"ले सकारका स्थानमा नकार भयो, 'अदान्' भयो, "अदसोऽसेः०"ले अदाका आकारका स्थानमा दीर्घ ऊकार भयो, दकारका स्थानमा मकार भयो, 'अमून्' सिद्ध भयो ।

---

मुत्वे कृते घिसंज्ञायां नाभावः ॥

**३५७. न मु ने ८ । २ । ३ ॥**

नाभावे कर्तव्ये कृते च मुभावो नासिद्धः । अमुना । अमूभ्याम् ३ । अमीभिः । अमुष्मै । अमीभ्यः २ । अमुष्मात् । अमुष्य । अमुयोः २ ।

---

**नेति**– नाआदेश गर्नु छ भन्दामा र ना आदेश गरिसकेपछि पनि उत्व मत्व असिद्ध नहोस् ।

**अमुना**– अदस् शब्ददेखि टा आयो, अत्व पररूप भयो, 'अद+आ' भयो । 'अद+आ' यहाँ "टाङसिङसामिनात्स्याः"ले इनआदेश पनि पायो । "अदसोऽसेः"ले उत्व मत्व पनि पायो, "पूर्वत्रासिद्धम्" लाएर "अदसोऽसे०" ले गरेको उत्व मत्व असिद्ध हुने भएकोमा "न मुने"ले नाभाव गर्नुछ भनेमा र गरिसकेपछि पनि उत्व मत्व असिद्ध हुँदैन, भनेकोले यहाँ उत्व मत्व गरेपछि ना आदेश गर्नु छ र उत्वमत्व असिद्ध भएन, सिद्ध नै भयो, परत्वात् उत्व मत्व नै पहिले भयो, 'अमु+आ' भयो, घिसंज्ञा गरेर ना आदेश गर्नु छ । अतः "शेषोघ्यसखि"का दृष्टिमा र "आङो नाऽस्त्रियाम्"का दृष्टिमा पनि उत्व मत्व सिद्ध भयो र 'अमु'लाई घिसंज्ञा भयो, टाका स्थानमा नाआदेश भयो, 'अमुना' भयो, अब "सुपि च"ले उत्व मत्व असिद्ध हुँदा "अदना" यस्तो देखेर दीर्घ पायो, पाएमा पुनः "नमुने"ले ना भाव गरिसकेपछि पनि उत्व मत्व असिद्ध नहोस् भनेकोले असिद्ध भएन, सिद्धै भयो, "सुपि च"ले अमुना यस्तै देख्यो र दीर्घ भएन 'अमुना' सिद्ध भयो ।

**अमूभ्याम्**– अदस् शब्ददेखि तृतीयाको एकवचन भ्याम् आयो, 'अदस् भ्याम्' भयो, अत्व, पररूप भयो, 'अद+भ्याम्' अदका अकारको स्थानमा 'सुपिच'ले दीर्घ भयो, अदाभ्याम् "अदसोऽसेः०"ले ऊत्व मत्व भयो, 'अमूभ्याम्' सिद्ध भयो ।

**अमीभिः**- अदस् शब्ददेखि भिस् आयो, 'अदस्+भिस्' भयो, अत्व पररूप 'अद+भिस्' भयो, यहाँ "बहुवचने झल्येत्"लाई बाधेर "अतो भिस ऐस्"ले ऐस् पाएकोमा "नेदमदसोरकोः"ले निषेध भयो, बाधकाभावे लाएर "बहुवचने झल्येत्"ले एत्व भयो, रुत्व, विसर्ग, भयो, 'अदेभिः' भयो, "अदसोऽसेः०"लाई बाधेर "एत ईद्‌बहुवचने"ले ईत्व मत्व भयो, 'अमीभिः' सिद्ध भयो ।

**अमुष्मै**– अदस् शब्ददेखि ङे आयो, अत्व पररूप अयो, 'अद+ए' भयो, "सर्वनाम्नः स्मै"ले ङेका स्थानमा स्मै भयो, 'अदस्मै' भयो, "अदसोऽसेः०"ले उत्व मत्व भयो, 'अमुस्मै' भयो, "आदेश प्रत्यययोः"ले सकारका स्थानमा षकार भयो, 'अमुष्मै' सिद्ध भयो । चुतर्थीको द्विवचनमा तृतीयाको द्विवचनमा जस्तै 'अमूभ्याम्' सिद्ध भयो ।

**अमीभ्यः** अदस् शब्ददेखि चतुर्थी बहुवचन भ्यस् आयो, अत्व, पररूप भयो "बहुवचने झल्येत्"ले एत्व भयो, 'अदेभ्यस्', रुत्व, विसर्ग भयो, 'अदेभ्यः' "एत ईद्‌बहुवचने"ले ईत्व मत्व भयो, 'अमीभ्यः' सिद्ध भयो ।

**अमुष्मात्**– अदस् शब्ददेखि पञ्चमीको एकवचन ङसि आयो, 'अदस्+अस्' भयो, अत्व पररूप भयो, 'अद+अस्' भयो, "ङसिङचोः स्मात्स्मिनौ"ले स्मात्‌आदेश भयो, उत्व, मत्व, षत्व भयो, 'अमुष्मात्' सिद्ध भयो । द्विवचन बहुवचनमा अमूभ्याम्, अमीभ्यः, पूर्ववत् जान्नु ।

**अमुष्य**– अदस् शब्ददेखि षष्ठीको एकवचन ङस् आयो, अत्व पररूप भयो "टा० ङसिङसामिनात्स्याः"ले स्य आदेश भयो, उत्व, मत्व, षत्व भयो, 'अमुष्य' सिद्ध भयो ।

**अमुयोः** अदस् शब्ददेखि षष्ठीको एकवचन ओस् आयो, अत्व, पररूप, भयो, 'अद+ओस्' "ओसि च"ले एकार भयो, 'अयादेश' भयो, 'अदयोस्' रुत्व, विसर्ग, भयो, 'अदयोः' भयो, "अदसोऽसेः०"ले उत्व मत्व भयो, 'अमुयोः' सिद्ध भयो ।

---

अमीषाम् । अमुष्मिन् । अमीषु ॥

इति हलन्तपुंल्लिङ्गाः

---------------

अमीषाम्– अदस् शब्ददेखि आम् आयो, 'अदस्+आम्' भयो, अत्व पररूप भयो, 'अद+आम्' भयो । 'अद+आम्' यहाँ "आमि सर्वनाम्नः०"ले सुट् भयो, "बहुवचने झल्येत्"ले एत्व भयो, 'अदेसाम्' "एत ईद् बहुवचने"ले ईत्व मत्व भयो, 'अमीसाम्' भयो, "यदागमस्तद्गुणीभूतः०" यो परिभाषा लाएर आम्का ग्रहणमा सुट्को पनि ग्रहण भयो र साम् यहाँ प्रत्ययको अवयव सकार हुनाले "आदेश प्रत्यययोः"ले षत्व भयो, 'अमीषाम्' सिद्ध भयो ।

अमुष्मिन्– अदस् शब्ददेखि ङि आयो, 'अदस्+इ' भयो, अत्व पररूप भयो, 'अद+इ' भयो, "ङसिङ्योः०"ले स्मिन् आदेश भयो, 'अदस्मिन्' भयो, उत्व, मत्व, षत्व भयो, 'अमुष्मिन्' सिद्ध भयो । सप्तमीको द्विवचनमा ओस्मा पूर्ववत् 'अमुयोः', हुन्छ ।

अमीषु– अदस् शब्ददेखि सुप् आयो, 'अदस्+सु' भयो, अत्व पररूप भयो, 'अद+सु' "बहुवचने झल्येत्"ले एत्व भयो, ईत्व मत्व भयो, 'अमीसु' भयो, "आदेशप्रत्यययोः"ले षत्व भयो, 'अमीषु' सिद्ध भयो ।

**अदस् शब्दका रूप**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र. | असौ | अमू | अमी |
| द्वि. | अमुम् | अमू | अमून् |
| तृ. | अमुना | अमूभ्याम् | अमीभिः |
| च. | अमुष्मै | अमूभ्याम् | अमीभ्यः |
| प. | अमुष्मात् | अमूभ्याम् | अमीभ्यः |
| ष. | अमुष्य | अमुयोः | अमीषाम् |
| स. | अमुष्मिन् | अमुयोः | अमीषु |

*(अदस् शब्दमा सम्बोधन रहँदैन ।)*

**हलन्तपुंलिङ्ग प्रकरण सकियो ।**

---------------

## अथ हलन्तस्त्रीलिङ्गाः

**३५८. नहो धः ८ । २ । ३४ ॥**

नहो हस्य धः स्याज्झलि पदान्ते च ॥

**३५९. नहिवृतिवृषिव्यधिरुचिसहितनिषु क्वौ ६ । ३ । ११६ ॥**

क्विबन्तेष्वेषु पूर्वपदस्य दीर्घः । उपानत्, उपानद् । उपानहौ । उपानत्सु ॥

---

### अब हलन्त स्त्रीलिङ्ग प्रकरण शुरू हुन्छ

**नह इति–** नह् धातुका हकारका स्थानमा धकार आदेश होस् झल् पर भएमा र पदान्तमा पनि ।

**नहीति–** क्विप् प्रत्यय अन्तमा हुने नह् धातु, वृत् धातु, वृष् धातु, व्यध् धातु, रुच् धातु, सह् धातु, तन् धातु, पर भएमा पूर्वपदका स्थानमा दीर्घ होस् ।

**उपानह्–** (जुत्ता) उप शब्दपूर्वमा हुने नह् धातुदेखि क्विप् प्रत्यय भयो, सर्वापहारी लोप, 'समास' भयो, उप नह् भयो । "नहिवृतिवृषि०"ले क्विप् प्रत्यय अन्तमा हुने नह्धातु पर हुनाले पूर्वपद उप शब्दका स्थानमा दीर्घ हुँदा "अलोऽन्त्यस्य" लाएर उपका अकारका स्थानमा दीर्घ आकार भयो, 'उपानह्' शब्द बन्यो ।

**उपानत्-द्** उपानह् शब्ददेखि सु आयो, 'उपानह्+सु' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, 'उपानह्' भयो, हकारका स्थानमा "हो ढः"ले ढत्व पायो, त्यसलाई बाधेर "नहो धः"ले धकार भयो, 'उपानध्' भयो जश्त्व भयो, "वाऽवसाने"ले चर्त्व भयो, 'उपानत्' सिद्ध भयो । चर्त्व नभएको पक्षमा 'उपानद्' सिद्ध भयो ।

**उपानहौ–** उपानह् शब्ददेखि औ आयो, 'उपानह्+औ' भयो, वर्णमेलन भयो, 'उपानहौ' सिद्ध भयो । अजादि विभक्तिमा प्रकृति प्रत्ययको संयोग भएपछि विभक्तिकार्य हुन्छ र रूप सिद्ध हुन्छन् । सुप् बाहेक हलादि विभक्तिमा धत्व, जश्त्व भएपछि 'उपानद्भ्याम्' आदि रूप सिद्ध हुन्छन् ।

**उपानत्सु–** सुप्मा धत्व जश्त्व पछि "खरि च" ले चर्त्व भएर तकार हुन्छ र उपानत्सु हुन्छ ।

**उपानह् शब्दका रूप–**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र. | उपानत्-द् | उपानहौ | उपानहः |
| द्वि. | उपानहम्, | उपानहौ, | उपानहः, |
| तृ. | उपानहा, | उपानद्भ्याम्, | उपानद्भिः |
| च. | उपानहे, | उपानद्भ्याम्, | उपानद्भ्यः |
| पं. | उपानहः | उपानद्भ्याम् | उपानद्भ्यः |
| ष. | उपानहः | उपानहोः | उपानहाम् |
| स. | उपानहि | उपानहोः | उपानत्सु |
| सं. | हे उपानत्-द् ! | हे उपानहौ ! | हे उपानहः ! |

क्विन्नन्तत्वात् कुत्वेन घः । उष्णिक्, उष्णिग् । उष्णिहौ । उष्णिग्भ्याम् ॥ द्यौः । दिवौ । दिवः । द्युभ्याम् ॥ गीः । गिरौ । गिरः ॥

---

**उष्णिक्-** (एक छन्द विशेष) उद् शब्द पूर्वमा हुने स्निह धातुदेखि "ऋत्विग्दधृक्०"ले क्विन् भयो, सर्वापहारी लोप भयो, निपातनाद् उद्का दकारको लोप भयो, "आदेशप्रत्यययोः"ले षत्व भयो, उष्णिह् शब्द बन्यो ।

**क्विन्नन्तत्वादिति**–उष्णिह् शब्द क्विन्प्रत्ययान्त हुनाले कुत्व भएर हकारका स्थानमा घकार हुन्छ ।

**उष्णिक्/ग्–** उष्णिह् शब्ददेखि सु आयो, 'उष्णिह्+स्' भयो, सकारको हल्ङ्यादिसूत्रले लोप भयो, 'उष्णिह्' भयो, हकारको स्थानमा "हो ढः"ले ढत्व पायो बाधेर "वा द्रुह०"ले वैकल्पिक घत्व पायो, त्यसलाई बाधेर "क्विन्प्रत्ययस्य कुः"ले कुत्व भएर हकारका स्थानमा घकार भयो, जश्त्व भयो, वैकल्पिक चर्त्व भयो, 'उष्णिक्' सिद्ध भयो । चर्त्व नभएका पक्षमा 'उष्णिग्' सिद्ध भयो ।

**उष्णिहौ–** उष्णिह् शब्ददेखि औ आयो, वर्णमेलन भयो, 'उष्णिहौ' सिद्ध भयो । यसैगरी अजादि विभक्तिमा विभक्तिसंयोग बाहेक अरू विशेष कार्य छैन ।

**उष्णिग्भ्याम्–** उष्णिह् शब्ददेखि भ्याम् आयो, 'उष्णिह् भ्याम' भयो । पूर्ववत् बाध्यबाधक भावानन्तर "क्विन् प्रत्ययस्य०"ले कुत्व भएर घकार भयो, जश्त्व भयो, 'उष्णिग्भ्याम्' सिद्ध भयो, । सुप् बाहेक अरू हलादि विभक्तिमा पनि हकारको कुत्व जश्त्व मात्र हुन्छ । सुप्मा हकारको कुत्व, जश्त्व चर्त्व हुन्छ । सुका सकारको षत्व, क्षत्व भएर 'उष्णिक्षु' रूप बन्दछ ।

**दिव्-** (आकाश) **द्यौः-** दिव् शब्ददेखि सु आयो, 'दिव्+स्' भयो, "दिव औत्"ले दिव्का वकारका स्थानमा औ भयो, यण् भयो, 'द्यौस्' भयो, रुत्व विसर्ग भयो 'द्यौः' सिद्ध भयो ।

**दिवौ–** दिव् शब्ददेखि औ आयो, 'दिव्+औ' वर्णमेल भयो, 'दिवौ' सिद्ध भयो ।

**दिवः-** दिव् शब्ददेखि जस् आयो, 'दिव्+अस्', 'दिवस्' रुत्व, विसर्ग, 'दिवः' सिद्ध भयो, सबै अजादि विभक्तिमा यसैगरी विभक्ति संयोग हुन्छ अरू विशेष कार्य छैन ।

**द्युभ्याम्–** दिव् शब्ददेखि भ्याम् आयो, 'दिव्+भ्याम्' भयो, "दिव उत्"ले वकारका स्थानमा उकार भयो, यण् भयो, 'द्युभ्याम्' सिद्ध भयो । **अरू** हलादि विभक्तिमा पनि "दिव उत्"ले उत्व र यण् हुन्छ । दिव्– शब्दका रूप पुलिङ्गका सुदिव् शब्दका जस्तै हुन्छन् ।

**दिव् शब्दका रूप-**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | द्यौः | दिवौ | दिवः | **द्वि.** | दिवम् | दिवौ | दिवः |
| **तृ.** | दिवा | द्युभ्याम् | द्युभिः | **च.** | दिवे | द्युग्याम् | द्युम्यः |
| **प.** | दिवः | द्युभ्याम् | द्युभ्यः | **ष.** | दिवः | दिवोः | दिवाम् |
| **स.** | दिवि | दिवोः | द्युषु | **सं.** | हे द्यौः ! | हे दिवौ ! | हे दिवः ! |

**रेफान्त शब्द- गिर्-** (वाणी) **गीः-** गिर् शब्ददेखि सु आयो, 'गिर्+स्' भयो, सकारको हल्ङ्यादि सूत्रले लोप भयो, "र्वोरुपधाया दीर्घ इकः"ले उपधादीर्घ भयो, 'गीर्' भयो, रेफको विसर्ग भयो, 'गीः' सिद्ध भयो ।

**गिरौ, गिरः-** औ र जस्का रूप पूर्ववत् सिद्ध हुन्छन् । यहाँ केही विशेष कार्य छैन ।

हलादि विभक्तिमा उपधादीर्घ हुन्छ, 'गीर्भ्याम्', 'गीर्भिः' आदि रूप हुन्छन् । सुप्मा उपधादीर्घ भएपछि 'गीर् षु' यहाँ "रोः सुपि"ले "खरवसानयोः०"ले पाएको विसर्ग आदेशको निषेध हुन्छ,

एवं पूः ॥ चतस्रः । चतसृणाम् ॥ का । के । काः । सर्वावत् ॥

---

'षत्व' भएर 'गीर्षु' यस्तो रूप हुन्छ । **गिर् शब्दका रूप-**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | गीः | गिरौ | गिरः | **द्वि.** | गिरम् | गिरौ | गिरः |
| **तृ.** | गिरा | गीर्भ्याम् | गीर्भिः | **च.** | गिरे | गीर्भ्याम् | गीर्भ्यः |
| **प.** | गिरः | गीर्भ्याम् | गीर्भ्यः | **ष.** | गिरः | गिरोः | गिराम् |
| **स.** | गिरि | गिरोः | गीर्षु | **सं.** | हे गीः ! | हे गिरौ ! | हे गिरः ! |

**एवमिति**- यस्तै प्रकारले पूः, पुरौ, पुरः आदि, पुर्, शब्दका रूप हुन्छन् ।

**चतुर् (चतसृ)**- (चारओटी स्त्री) चतुर् शब्द नित्य बहुवचनान्त छ ।

**चतस्रः**-स्त्रीलिङ्गमा चतुर् शब्ददेखि जस् आयो । "त्रिचतुरोःस्त्रियां०"ले त्रिका स्थानमा 'चतसृ' आदेश भयो, "ऋन्नेभ्यो डीप्"ले पाएको डीप्को "न षट् स्वस्रादिभ्यः"ले निषेध भयो । 'चतसृ+अस्' यहाँ यण्लाई बाधेर "प्रथमयोः०"ले पूर्वसवर्ण दीर्घ पायो, त्यसलाई बाधेर "अचि र ऋतः"ले रेफ आदेश भयो, 'चतस्र्+अस्'-चतस्रस्, रुत्व, विसर्ग भयो, 'चतस्रः' सिद्ध भयो । शस्मा यही प्रक्रियाद्वारा 'चतस्रः' यही रूप हुन्छ ।

**चतसृभिः**- भिस्मा 'चतुर्+भिस्' भएपछि चतसृ आदेश, डीप्को प्राप्ती त्यसको "न षट् स्वस्रादिभ्यः"ले निषेध, चतसृ भिस् यहाँ रुत्व, विसर्ग भयो 'चतसृभिः' सिद्ध भयो । यस्तै प्रकार ले चतुर्थी र पञ्चमीको बहुवचन भ्यस्मा 'चतसृभ्यः', यो रूप सिद्ध हुन्छ ।

**चतसृणाम्**- स्त्रीलिङ्गमा चतुर् शब्ददेखि आम् आयो, चतसृ आदेश भयो, पूर्ववत् डीप् पाएको निषेध भयो । 'चतसृ+आम्,' यहाँ 'षट्चतुर्भ्यश्च'ले नुट् भयो, 'चतसृ+नाम्' भयो, "नामि"ले दीर्घ पाएको "न तिसृचतसृ"ले निषेध भयो, "ऋवर्णान्नस्य णत्वं वाच्यम्"ले णत्व भयो, 'चतसृणाम्' सिद्ध भयो ।

सुप्मा पूर्ववत् 'चतसृ+सु' भएपछि "आदेशप्रत्यययोः"ले षत्व भयो, 'चतसृषु' सिद्ध भयो ।

मकारान्त शब्द किम् ( प्रश्नवाचक, कुन स्त्री)

**का**-स्त्रीत्व विवक्षामा किम् शब्ददेखि सु आयो, 'किम+स्' भयो, "किम कः"ले क आदेश भयो, स्त्रीत्व विवक्षा हुनाले "अजाद्यतष्टाप्"ले टाप् भयो, 'क+आ', दीर्घ भयो, 'का+स्' भयो, हल्ङ्यादिसूत्रले सुका सकारको लोप भयो, 'का' सिद्ध भयो ।

**के**- स्त्रीलिङ्गमा किम् शब्ददेखि औ आयो, पूर्ववत् किम्का स्थानमा क आदेश, टाप् प्रत्यय भयो, "औङ आपः"ले औका स्थानमा शीआदेश गुण भयो, 'के' सिद्ध भयो ।

**काः**- स्त्रीलिङ्गमा किम् शब्ददेखि जस् आयो, पूर्ववत् क आदेश टाप् प्रत्यय दीर्घ भयो, 'का+अस्' भयो, किम् शब्द सर्वनाम संज्ञक भएपछि ह्रस्व अकारान्त नहुनाले शी आदेश भएन "अकः सवर्णे०"लाई बाधेर "प्रथमयोः०"ले पाएको पूर्वसवर्णदीर्घको "दीर्घाज्जसि च"ले निषेध भएपछि "बाधकाभावे०" लाएर "अकः सवर्णे०"ले दीर्घ भयो, 'कास्' भयो, सकारको रुत्व, विसर्ग भयो 'काः' सिद्ध भयो ।

**सर्वावदिति**- किम् शब्दको स्त्रीलिङ्गमा सर्वा शब्दका जस्तै रूप हुन्छन् । अर्थात् ङित् विभक्तिको स्याट् आगम, आप्को ह्रस्व, आम्को सुट् आगम हुन्छ ।

---

**३६०. यः सौ ७ । २ । ११० ॥**

इदमो दस्य यः । इयम् । त्यदाद्यत्वम् । पररूपत्वम् । टाप् । दश्चेति मः । इमे । इमाः । इमाम् । अनया । "हलि लोपः" । आभ्याम् । आभिः । अस्यै । अस्याः । अनयोः ।

---

**य इति**– इदम् शब्दका दकारका स्थानमा यकार आदेश होस्, सु पर भएमा, [६१] स्त्रीलिङ्गमा ।

**इयम्**– स्त्रीलिङ्गमा इदम् शब्ददेखि सु आयो, 'इदम्+स्' भयो, "त्यदादीनामः"ले अत्व पायो, त्यसलाई बाधेर "इदमो मः"ले मकारका स्थानमा मकारै भयो, "यः सौ"ले दकारका स्थानमा यकार भयो, 'इयम्+स्' भयो, "हल्ङ्याब्भ्यो०"ले सकारको लोप भयो, 'इयम्' सिद्ध भयो ।

**त्यदाद्यत्वमिति**– "त्यदादीनामः"ले अत्व हुन्छ, पररूप हुन्छ अनि टाप् प्रत्यय हुन्छ । "दश्च"ले दकारका स्थानमा मकार हुन्छ ।

**इमे**– इदम् शब्ददेखि स्त्रीलिङ्गमा औ आयो, 'इदम्+औ' भयो, अत्व, पररूप भयो, टाप् प्रत्यय भयो, दीर्घ भयो, "दश्च"ले मकार भयो, 'इमा+औ', यहाँ औका स्थानमा "औङ आपः"ले शी आदेश, 'गुण' भयो, 'इमे' सिद्ध भयो ।

**इमाः**– स्त्रीलिङ्गमा इदम् शब्ददेखि जस् आयो, अत्व, पररूप, टाप् दीर्घ भएपछि "दश्च"ले मत्व भयो, 'इमा+अस्' भयो, "अकः सवर्णे०"लाई बाधेर पाएको पूर्वसवर्णदीर्घलाई "दीर्घाज्जसि च"ले निषेध गरेपछि "बाधकाभावे०" लाएर "अकः सवर्णे दीर्घः"ले दीर्घ भयो, 'इमास्' भयो, रुत्व, विसर्ग भयो, 'इमाः' सिद्ध भयो ।

**इमाम्**– इदम् शब्दको स्त्रीलिङ्गमा अम् आयो, अत्व पररूप टाप् दीर्घ मत्व भएपछि 'इमा+अम्' यहाँ समस्त बाध्यबाधक भावपछि "अमि पूर्वः"ले पूर्वरूप भयो, 'इमाम्' सिद्ध भयो ।

औट्मा 'इमे', शस्मा 'इमाः' हुन्छ ।

**अनया**– स्त्रीलिङ्गमा इदम् शब्ददेखि टा आयो, अत्व, पररूप, टाप्, दीर्घ, भयो । 'इदा+आ' भयो, "दश्च"लाई बाधेर "अनाप्यकः"ले इद् भागका स्थानमा अन्आदेश भयो, 'अना+आ' भयो, "आङि चापः"ले एकार भयो, 'अने+आ' भयो, अय् आदेश भयो, 'अनया' सिद्ध भयो ।

**हलीति**– "हलि लोपः"ले हलादि विभक्ति पर भएमा इद् भागको लोप हुन्छ ।

**आभ्याम्**– स्त्रीलिङ्गमा इदम् शब्ददेखि भ्याम् आयो, अत्व, पररूप, टाप् दीर्घ भयो, 'इदा+भ्याम्' भयो "दश्च"ले मत्व पायो, बाधेर "अनाप्यकः"ले अन् पायो, त्यसलाई बाधेर "हलि लोपः"ले इद् भागको लोप भयो, रुत्व, विसर्ग भयो, 'आभ्याम्' सिद्ध भयो ।

**अस्यै**– स्त्रीलिङ्गमा इदम् शब्ददेखि ङे आयो, अत्व, पररूप, टाप्, दीर्घ भएर 'इदा+ए' भयो, "सर्वनाम्नः स्याड्ढ्रस्वश्च"ले स्याट् आगम ह्रस्व भयो, वृद्धि भयो, 'इद+स्यै' भयो, "यदागमस्तद्गुणीभूतस्तद्ग्रहणेन गृह्यते" यो परिभाषा लाएर 'स्यै' यो हलादि विभक्ति पर हुनाले "दश्च" अनाप्यकः"लाई बाधेर "हलि लोपः"ले इद् भागको लोप भयो, 'अस्यै' सिद्ध भयो ।

**अस्याः**– स्त्रीलिङ्गमा इदम् शब्ददेखि ङसि आयो, अत्व, पररूप, टाप्, दीर्घ, भएपछि 'इदा+अस्' यहाँ अस्को स्याट् आगम, आप्को ह्रस्व, 'स्या+अस्'मा दीर्घ भएर 'इद+स्यास्' भएपछि पूर्ववत् "हलि लोपः"ले इद् भागको लोप भयो, 'अस्यास्', रुत्व, विसर्ग भयो, 'अस्याः' सिद्ध भयो । ङस्मा पनि यही प्रक्रियाद्वारा 'अस्याः' हुन्छ ।

**अनयोः**– स्त्रीलिङ्गमा इदम् शब्ददेखि ओस् आयो,, अत्व, पररूप, टाप्, दीर्घ भयो, 'इदा+ओस्'

---

६१ यो यकार आदेश परिशेषात् स्त्रीलिङ्गमा मात्र हुन्छ, किन भने पुलिङ्गमा "इदोय् पुंसि"ले अय्आदेश गर्छ । नपुंसकलिङ्गमा सुको लुक् भएपछि "न लुमताङ्गस्य" ले निषेध गर्छ ।

आसाम् । अस्याम् । आसु ॥ त्यदाद्यत्वम् । टाप् । स्याः । त्ये । त्याः ॥ एवं तद्,

"दश्च"लाई बाधेर "अनाप्यक"ले अन्आदेश भयो, "आङि चापः"ले एकार भयो, 'अने+ओस्' भयो, अयादेश भयो, 'अनयोः' सिद्ध भयो । सप्तमीको द्विवचन ओस्मा पनि यही प्रक्रियाद्वारा यही रूप हुन्छ ।

**आसाम्**– स्त्रीलिङ्गमा इदम् शब्ददेखि आम् आयो, अत्व, पररूप, टाप्, दीर्घ भयो, 'इदा+आम्' भयो, "आमि सर्वनाम्नः"ले सुट् भयो, 'इदासाम्' भयो, साम् यो हलादि विभक्ति पर छ र अन् आदेशलाई बाधेर "हलि लोप"ले इद् भागको लोप भयो, 'आसाम्' सिद्ध भयो ।

**अस्याम्**– स्त्रीलिङ्गमा इदम् शब्ददेखि ङि भयो, अत्व, पररूप, टाप् दीर्घ भयो, 'इदा+इ' भयो, "ङेराम्नद्याम्नीभ्यः"ले ङिका स्थानमा आम् भयो, स्याट् आगम र ह्रस्व भयो, 'इद+स्याम्' भयो, पूर्ववत् "हलि लोपः"ले इद् भागको लोप भयो, 'अस्याम्' सिद्ध भयो ।

**आसु**– स्त्रीलिङ्गमा इदम् शब्ददेखि सुप् आयो, अत्व, पररूप, टाप्, दीर्घ भयो, 'इदा+सु' "हलि लोपः"ले इद् भागको लोप भयो, 'आसु' सिद्ध भयो ।

**इदम् शब्दका रूप** (स्त्रीलिङ्गमा)

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | इयम् | इमे | इमाः | **द्वि.** | इमाम् | इमे | इमाः |
| **तृ.** | अनया | आभ्याम् | आभिः | **च.** | अस्यै | आभ्याम् | आभ्यः |
| **प.** | अस्याः | आभ्याम् | आभ्यः | **ष.** | अस्या | अनयोः | आसाम् |
| **स.** | अस्याम् | अनयोः | आसु । | *इदम् शब्द त्यदादि हुनाले संबोधन हुँदैन ।* | | | |

**दकारान्त शब्द त्यद्**– (त्यो) तद् शब्दको पर्यायवाची

विभक्ति ल्याएपछि त्यद् शब्दमा 'त्यदादीनामः' ले अत्व, पररूप, टाप् दीर्घ हुन्छ ।

**स्या**– त्यद् शब्दको स्त्रीलिङ्गमा प्रथमैकवचन सु आयो, 'त्यद्+स्' भयो, अत्व, पररूप, टाप्, दीर्घ 'त्या+स्' भयो "तदोः सः सा"ले सत्व भयो, 'स्या+स्' भयो, सकारको "हलङ्याब्भ्यो०"ले लोप भयो, 'स्या' सिद्ध भयो ।

**त्ये**– स्त्रीलिङ्गमा त्यद् शब्ददेखि औ आयो, अत्व, पररूप, टाप् दीर्घ भयो, 'त्या+औ' भयो, "औङ आपः"ले शीआदेश गुण भयो, 'त्ये' सिद्ध भयो ।

**त्याः**– स्त्रीलिङ्गमा त्यद् शब्ददेखि जस् आयो, अत्व, पररूप, टाप्, भयो, 'त्या+अस्' भयो, सवर्ण दीर्घलाई बाधेर पूर्वसवर्णदीर्घ पाएकोमा "दीर्घाज्जसि च"ले निषेध भएपछि "अकः सवर्णे०"ले सवर्ण दीर्घ भयो, 'त्यास्' भयो रुत्व, विसर्ग, भयो, 'त्याः' सिद्ध भयो ।

यसका सबै रूप सर्वा शब्दका जस्तै हुन्छन् ।

**एवमिति**– यस्तै तद्, एतद् शब्द पनि जान्नू । दुवै शब्दमा "तदोः सः सावनन्त्ययोः" लाग्छ ।

**तद् शब्दका रूप**– (स्त्रीलिङ्गमा)

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| प्र. | सा | ते | ताः | **द्वि.** | ताम् | ते | ताः |
| तृ. | तया | ताभ्याम् | ताभिः | **च.** | तस्यै | ताभ्याम् | ताभ्यः |
| प. | तस्याः | ताभ्याम् | ताभ्यः | **ष.** | तस्याः | तयोः | तासाम् |
| स. | तस्याम् | तयोः | तासु | *त्यदादि शब्द हुनाले संबोधन हुँदैन ।* | | | |

एतद् ॥ वाक्, वाग् । वाचौ । वाग्भ्याम् । वाक्षु ॥
अप्शब्दो नित्यं बहुवचनान्तः । अप्तृन्निति दीर्घः आपः । अपः ॥

**३६१. अपो भि ७ । ४ । ४८ ॥**

अपस्तकारो भादौ प्रत्यये । अद्भिः । अद्भ्यः । अद्भ्यः ।

---

**चकारान्त शब्द वाच्-** (वाणी, बोली)

**वाक्/ग्-** वाच् शब्ददेखि सु आयो, 'वाच्+स्' भयो, सकारको "हल्-ङ्याव्भ्यो"ले लोप भयो, "चोः कुः"ले कुत्व भयो, जश्त्व चर्त्व भयो, 'वाक्' चर्त्व न भएका पक्षमा 'वाग्' यी दुई रूप सिद्ध भए ।

**वाचौ-** वाच् शब्ददेखि औ आयो, 'वाच्+औ', 'वाचौ' सिद्ध भयो ।

अजादि विभक्तिमा प्रकृतिप्रत्यय संयोग र विभक्ति कार्य बाहेक अरू केही विशेष कार्य छैन ।

**वाग्भ्याम्-** वाच् शब्ददेखि तृतीयाको एकवचन भ्याम् आयो, 'वाच्+भ्याम्' भयो । "चोः कुः"ले कुत्व, जश्त्व भयो, 'वाग्भ्याम्' सिद्ध भयो ।

भिस्मा र चतुर्थी र पञ्चमीको भ्याम् भ्यस्मा पनि यही प्रक्रिया हुन्छ ।

**वाक्षु-** वाच् शब्ददेखि सुप् आयो, 'वाच्+सु' भयो, कुत्व, जश्त्व, "खरि च"ले चर्त्व भयो, "आदेशप्रत्यययोः"ले सुका सकारको मूर्धन्य षकार भयो । ककार र षकारको संयोग हुँदा क्ष भयो, 'वाक्षु' सिद्ध भयो ।

**वाच् शब्दका रूप-**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | वाक-ग् | वाचौ | वाचः | **द्वि.** | वाचम् | वाचौ | वाचः |
| **तृ.** | वाचा | वाग्भ्याम् | वाग्भिः | **च.** | वाचे | वाग्भ्याम् | वाग्भ्यः |
| **प.** | वाचः | वाग्भ्याम् | वाग्भ्यः | **ष.** | वाचः | वाचोः | वाचाम् |
| **स.** | वाचि | वाचोः | वाक्षु | **सं.** | हे वाक्-ग् ! | हे वाचौ ! | हे वाचः ! |

यस्तै प्रकारले रुच् त्वच् आदि शब्द पनि जान्नू ।

**अप्शब्द इति-** अप् शब्द नित्य बहुवचनान्त छ । "अप्तृन्तृच्०"ले दीर्घ हुन्छ ।

**आपः-** अप् शब्ददेखि जस् आयो, 'अप्+अस्' भयो, सर्वनामस्थान पर हुनाले "अपृतृन्तृच्०"ले दीर्घ भयो, 'आप्+अस्', 'आपस्' भयो, रुत्व, विसर्ग भयो, 'आपः' सिद्ध भयो ।

**अपः-** अप् शब्ददेखि शस् आयो, 'अप्+अस्' भयो, सर्वनामस्थान पर नहुनाले 'अपतृन्०'ले दीर्घ भएन वर्णमेलन भयो, 'अपस्' भयो, रुत्व, विसर्ग भयो, 'अपः' सिद्ध भयो ।

**अपोभीति-** अप् शब्दका अन्त्य अल्का स्थानमा तकार आदेश होस्, भकार आदिमा हुने प्रत्यय पर भएमा ।

**अद्भिः-** अप् शब्ददेखि भिस् आयो, 'अप्+भिस्' भयो "अपो भि"ले अप्का पकारका स्थानमा तकार भयो "झलां जशोऽन्ते"ले जश्त्व भएर दकार भयो, वर्णमेलन भयो, रुत्व, विसर्ग भयो, 'अद्भिः' सिद्ध भयो ।

**अद्भ्यः-** अप् शब्ददेखि चतुर्थीको बहुवचन 'भ्यस्' आयो, "अपो भि"ले भकारादि प्रत्यय पर हुनाले पकारका स्थानमा तकार भयो जश्त्व भयो, वर्णमेलन भयो, 'अद्+भ्यस्', रुत्व, विसर्ग भयो, 'अद्भ्यः' सिद्ध भयो । पञ्चमीको बहुवचन भ्यस्मा पनि तद्वत् 'अद्भ्यः' सिद्ध भयो ।

आम्मा 'अपाम्', सुप्मा 'अप्सु' हुन्छ । विशेष कार्य केही छैन ।

---

अपाम् । अप्सु ॥ दिक्, दिग् । दिशौ । दिशः । दिग्भ्याम् ॥ त्यदादिष्विति दृशेः क्विन्विधानादन्यत्रापि कुत्वम् । दृक्, दृग् । दृशौ । दृग्भ्याम् ॥

---

**शकारान्त शब्द दिश्-** (पूर्व आदि दिशा)

दिश् धातुदेखि "ऋत्विग्दधृक्स्रग्दिगुष्णिगञ्चुयुजिक्रुञ्चां च"ले क्विन् प्रत्यय भयो, सर्वापहारी लोप भयो 'दिश्'शब्द बन्यो ।

**दिक्/ग्-** दिश् शब्ददेखि सु आयो, 'दिश्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, "व्रश्चभ्रस्जसृज०"ले षत्व भयो, जश्त्व भयो, "क्विन्प्रत्ययस्य कुः"ले कुत्व भयो, चर्त्व भयो, 'दिक्', चर्त्व नभएका पक्षमा 'दिग्' यसरी दुई रूप सिद्ध भए ।

दिश् शब्दपुंलिंगको तादृश् शब्द जस्तै हो । सु र सुप्मा दिश्का शकारका स्थानमा ष,ड,ग,क क्रमशः हुन्छन् । भ्याम्, भिस्, भ्यस्मा ष,ड,ग मात्र हुन्छन् । सुप्मा 'दिक्+सु' भएपछि "आदेशप्रत्यययोः"ले सुका सकारको षत्व, क र ष, मिलेर क्षत्व भएर 'दिक्षु' सिद्ध हुन्छ ।

**दिशः-** जस्, शस्, ङसि, ङस्मा "दिशः" यो रूप हुन्छ ।

दिग्भ्याम् यो तीनवटै भ्याम्को रूप हो ।

**दिश् शब्दका रूप-**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | दिक्/ग् | दिशौ | दिशः | **द्वि.** | दिशम् | दिशौ | दिशः |
| **तृ.** | दिशा | दिग्भ्याम् | दिग्भिः | **च.** | दिशे | दिग्भ्याम् | दिग्भ्यः |
| **प.** | दिशः | दिग्भ्याम् | दिग्भ्यः | **ष.** | दिशः | दिशोः | दिशाम् |
| **स.** | दिशि | दिशोः | दिक्षु | **सं.** | हे दिक्/ग् ! | हे दिशौ ! | हे दिशः ! |

**दृश्-** (आँखा) दृश् धातुदेखि क्विप्प्रत्यय भयो, सर्वापहारी लोप भयो दृश् शब्द बन्यो ।

**त्यदादिष्विति-** "त्यदादिषु दृशोऽनालोचने कञ्च" यो सूत्रले दृश् धातुदेखि क्विन्प्रत्यय विधान गरिएको हुँदा अन्यत्र पनि (क्विन्प्रत्यय नभएका ठाउँमा पनि) दृश् धातुको कुत्व हुन्छ ।

"क्विन्प्रत्ययस्य कुः" यस सूत्रमा "क्विन्प्रत्ययस्य" यो समस्तपद हो र यहाँ बहुव्रीहि समास भएको छ। बहुव्रीहि दुई प्रकारका हुन्छन् । तद्गुणसंविज्ञान र अतद्गुणसंविज्ञान । "क्विन्प्रत्ययो विहितो यस्मात्" यो तद्गुणसंविज्ञान बहुव्रीहि हो । "क्विन्प्रत्ययो दृष्टो यस्मात्" यो अतद्गुणसंविज्ञान बहुव्रीहि हो । यहाँ अतद्गुणसंविज्ञान बहुव्रीहि समासभएको छ । यही आशयलाई ध्यानमा राखेर "क्विन्प्रत्ययस्य०" यो पदको अर्थ क्विन्प्रत्यय देखिन्छ, जस्जस्देखि यस्तो गरिएको छ । त्यही कुरा यहाँ वृत्तिकारले "त्यदादिष्विति०" यस वाक्यमा स्पष्ट गर्नुभएको छ ।

**दृक्/दृग्-** दृश् शब्ददेखि सु आयो, 'दृश्+स्' भयो, "हल्ङ्याब्भ्यो०"ले लोप भयो, दृश्का शकारका स्थानमा "व्रश्चभ्रस्ज०"ले षकार भयो, षकारका स्थानमा "झलां जशोऽन्ते"ले जश्त्व भएर 'डकार' भयो, "क्विन्प्रत्ययस्य कुः"ले कुत्व भएर डकारका स्थानमा गकार भयो, "वाऽवसाने"ले चर्त्व भएर गकारका स्थानमा ककार भयो, 'दृक्', चर्त्व नभएका पक्षमा 'दृग्' यी दुई रूप सिद्ध भए ।

**दृशौ-** दृश् शब्ददेखि औ आयो, 'दृशौ' सिद्ध भयो ।

**दृग्भ्याम्-** दृश् शब्ददेखि भ्याम् आयो, दृश्का शकारको षत्व, डत्व, कुत्व भयो, 'दृग्भ्याम्' सिद्ध भयो ।

दृश् शब्दका रूप दिश् शब्दका जस्तै हुन्छन् ।

त्विट्, त्विड् । त्विषौ । त्विड्भ्याम् ॥ "ससजुषो रुः" इति रुत्वम् । सजूः । सजुषौ । सजूर्भ्याम् । आशीः । आशिषौ । आशीर्भ्याम् ॥

---

**त्विष्-** (कान्ति) **त्विट्/त्विड्-** त्विष् शब्ददेखि सु आयो, 'त्विष्+स्' भयो, "हल्ङ्याब्भ्यो०"ले सकारको लोप भयो, त्विष्का षकारको जश्त्व भएर डकार भयो, डकारको "वाऽवसाने"ले वैकल्पिक चर्त्व भयो, 'त्विट्' चर्त्व नभएका पक्षमा 'त्विड्' यी दुई रूप सिद्ध भए ।

औमा 'त्विषौ' हुन्छ । भ्याम्मा षकारको जश्त्व भएर 'त्विड्भ्याम्' हुन्छ । सुप्मा जश्त्व भएर 'त्विड्+सु' भएपछि वैकल्पिक धुट् आगम भएको पक्षमा 'त्विट्त्सु' नभएको पक्षमा 'त्विट्सु' हुन्छ ।

त्विष् शब्दका रूप रत्नमुष् शब्दका जस्तै हुन्छन् ।

**सजुष्-** (साथी, सँगै रहने)

**ससजुषोरिति-** पदान्तमा "ससजुषो रुः"ले रुत्व हुन्छ, अर्थात् "झलां जशोऽन्ते"ले पाएको जश्त्वलाई रुत्वले बाध्दछ ।

**सजुष्-** शब्ददेखि सु आयो, 'सजुष्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, "ससजुषो रुः"ले सजुष् शब्दसम्बन्धी मूर्धन्य षकार छ र जश्त्वलाई बाधेर रुत्व भयो, 'सजुर्' भयो, "र्वोरुपधाया०"ले उपधादीर्घ भयो, विसर्ग भयो, 'सजूः' सिद्ध भयो ।

**सजुषौ-** सजुष् शब्ददेखि औ आयो, वर्णमेलन भयो, 'सजुषौ' सिद्ध भयो ।

**सजूर्भ्याम्-** सजुष् शब्ददेखि भ्याम् आयो, 'सजुष्+भ्याम्' भयो, "ससजुषोः०"ले रुत्व भयो, "र्वोरुपधायाः०"ले उपधादीर्घ भयो, 'सजूर्भ्याम्' सिद्ध भयो ।

**सजूष्षु/सजूःषु-** सजुष् शब्ददेखि सुप् आयो, रुत्व भयो, उपधादीर्घ भयो "खरवसानयोः" ले विसर्ग भयो, 'सजूः+सु' भयो, विसर्गका स्थानमा "विसर्जनीयस्य सः"ले दन्त्य सकार पायो, त्यसलाई बाधेर "वा शरि"ले विसर्गका स्थानमा विसर्ग भयो, "नुम्विसर्जनीयशर्व्यवायेऽपि"ले षत्व भयो, 'सजूःषु' सिद्ध भयो । विसर्ग नभएका पक्षमा "विसर्जनीयस्य सः"ले विसर्गका स्थानमा दन्त्य सकार भयो, पूर्वसूत्र "नुम्विसर्जनीय०"ले सुका सकारको षत्व भयो, "ष्टुना ष्टुः"ले ष्टुत्व भएर पूर्वका सकारको षकार भयो, 'सजूष्षु' यी दुई रूप सिद्ध भए ।

**आशिष्-** (शुभेच्छा, आशीर्वाद)

आङ् उपसर्ग पूर्वमा हुने शास् धातुदेखि क्विप् प्रत्यय भयो, सर्वापहारी लोप भयो, "आशासः क्वावुपधाया इत्वं वाच्यम्" यस वार्तिकले इत्व भयो । "शासिवसिघसीनां च"ले षत्व भयो, आशिष् शब्द बन्यो ।

**आशीः-** आशिष् शब्ददेखि सु आयो, 'आशिष्+स्' भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, रुत्वका दृष्टिमा षत्व असिद्ध हुनाले "ससजुषो रुः"ले आशिष्का सकारको स्थानमा रुत्व भयो, आशिर् भयो "र्वोरुपधाया दीर्घ इकः"ले उपधाको दीर्घ भयो, आशीर् भयो, रेफको विसर्ग भयो, 'आशीः' सिद्ध भयो ।

**आशिषौ-** आशिष् शब्ददेखि औ आयो, 'आशिष्+औ', 'आशिषौ' सिद्ध भयो ।

यस्तै प्रकारले अरू अजादि विभक्तिमा पनि प्रकृति प्रत्यय संयोग र विभक्तिकार्य हुन्छ ।

**आशीर्भ्याम्-** आशिष् शब्ददेखि भ्याम् आयो, पूर्ववत् रुत्व उपधाको दीर्घ भयो, 'आशीर्भ्याम्' सिद्ध भयो ।

यस्तै प्रकारले भिस् भ्यस्मा पनि रूपसिद्ध हुन्छन् ।

**सुप्मा/-** "वा शरि"ले विसर्ग भएको पक्ष र "विसर्जनीयस्यसः"ले दन्त्य सकार भएको

---

असौ । ऊत्वमत्वे । अमू । अमूः । अमुया । अमूभ्याम् ३ । अमूभिः । अमुष्यै ।

---

पक्ष यी दुवै पक्षमा "नुम्विसर्जनीय०"ले षत्व हुन्छ । दन्त्य सकारका स्थानमा ष्टुत्व हुन्छ, र 'आशीः षु' 'आशीष्षु' दुई रूप सिद्ध हुन्छन् । **आशिष् शब्दका रूप-**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | आशीः | आशिषौ | आशिषः | **द्वि.** | आशिषम् | आशिषौ | आशिषः |
| **तृ.** | आशिषाः | आशीर्भ्याम् | आशीर्भिः | **च.** | आशिषे | आशीर्भ्याम् | आशीर्भ्यः |
| **पं.** | आशिषः | आशीर्भ्याम् | आशीर्भ्यः | **ष.** | आशिषः | आशिषोः | आशिषाम् |
| **स.** | आशिषि | आशिषोः | आशीःषु/आशीष्षु | **सं.** | हे आशीः ! | हे आशिषौ ! | हे आशिषः ! |

**सकारान्त शब्द अदस्-** (समीपस्थ व्यक्ति वा वस्तु)

**असौ-** स्त्रीलिङ्गमा अदस् शब्ददेखि सु आयो, 'अदस्+स्' "त्यदादीनामः"लाई बाधेर "अदस औ सुलोपश्च"ले अदस्‌का सकारका स्थानमा औकार भयो, सुको लोप भयो, वृद्धि भयो, अदौ भयो, "तदोः सः०"ले सत्व भयो, 'असौ' सिद्ध भयो ।

**ऊत्वमत्वे इति-** सम्पूर्ण विभक्तिकार्य भैसकेपछि ऊत्व मत्व भएर अमू बन्दछ ।

**अमू-**स्त्रीलिङ्गमा अदस् शब्ददेखि औ आयो, अत्व पररूप टाप् दीर्घ भएपछि 'अदा+औ' भयो "आङि चापः"ले औका स्थानमा शी भयो, गुण भयो, अदे, "अदसोऽसेः०"ले ऊत्व मत्व भयो, 'अमू' सिद्ध भयो ।

**अमूः-** स्त्रीलिङ्गमा अदस् शब्ददेखि जस् आयो, अत्व, पररूप, टाप्, दीर्घ भयो, 'अदा+अस्' भयो "प्रथमयोः०"लाई "दीर्घाज्जसि च"ले निषेध भएकोले "अकः सवर्णे०"ले दीर्घ भयो, 'अदास्' भयो, रुत्व विसर्ग भयो, 'अदाः' "अदसोऽसेः०"ले ऊत्व, मत्व भयो ,'अमूः' सिद्ध भयो ।

अदस् शब्दमा सुबाहेक अरू सबै विभक्तिमा अत्व, पररूप, टाप् दीर्घ भएर अदा यो रूप बन्छ । आबन्त हुनाले सर्वा शब्द जस्तै हुन्छ सर्वा शब्दकै प्रक्रियाद्वारा विभक्तिकार्य गरिसकेपछि अनि मात्र उत्व मत्व गर्नुपर्छ । जहाँ दकारदेखि पर दीर्घ वर्ण छ, वहाँ दीर्घ ऊकार, जहाँ ह्रस्व वर्ण छ त्यहाँ ह्रस्व उकार हुन्छ । टा मा र ओस्‌मा र ङित् विभक्तिमा पनि ह्रस्व अकार हुने हुनाले ह्रस्व उकार हुन्छ । अन्यत्र दीर्घ ए र आ का स्थानमा दीर्घ ऊकार हुन्छ । जस्तै अम्‌मा 'अदाम्' भएपछि 'अमूम्' भयो । औमा 'अदे' भएपछि 'अमू' शस्‌मा 'अदाः' भएपछि 'अमूः' भयो ।

**अमुया-** स्त्रीलिङ्गमा अदस् शब्ददेखि टा आयो, अत्व, पररूप, टाप्, दीर्घ, भयो, 'अदा+आ' "आङि चापः"ले एकार अय्‌आदेश भयो, 'अदया' यहाँ दकारदेखि पर रहेको ह्रश्व अकारका स्थानमा उकार र दकारका स्थानमा मकार भयो, 'अमुया' सिद्ध भयो ।

**अमूभ्याम्:-** स्त्रीलिङ्गमा अदस् शब्ददेखि भ्याम् आयो, अत्व, पररूप, टाप्, दीर्घ, भयो, अदाम्याम्, ऊत्व, मत्व भयो, 'अमूभ्याम्' सिद्ध भयो ।

**अमूभिः-** स्त्रीलिङ्गमा अदस् शब्ददेखि भिस् आयो, 'अदस्+भिस्' भयो, अत्व पररूप टाप् दीर्घ भयो, 'अदा+भिस्' भयो, सकारको रुत्व विसर्ग भयो, 'अदाभिः' ऊत्व, मत्व भयो 'अमूभिः' सिद्ध भयो ।

**अमुष्यै-** स्त्रीलिङ्गमा अदस् शब्ददेखि ङे आयो, अत्व, पररूप, टाप्, दीर्घ भयो, 'अदा+ए' भयो, "सर्वनाम्नः स्याट्०"ले स्याट् आगम र आप्‌को ह्रस्व भयो, वृद्धि भयो, 'अदस्यै' उत्व, मत्व, षत्व भयो, 'अमुष्यै' सिद्ध भयो ।

**अमूभ्यः-** स्त्रीलिङ्गमा अदस् शब्ददेखि चतुर्थीको एकवचन भ्यस् आयो, अत्व, पररूप, टाप्, दीर्घ भयो भ्यस्‌का सकारको रुत्व, विसर्ग, भयो, 'अदाभ्यः' ऊत्व, मत्व भयो, 'अमूभ्यः' सिद्ध भयो । पञ्चमीको द्विवचनमा पनि यही प्रक्रियाद्वारा 'अमूभ्यः' हुन्छ ।

---

अमूभ्यः २ । अमुष्याः । अमुयोः २ । अमूषाम् । अमुष्याम् । अमूषु ॥

## इति हलन्तस्त्रीलिङ्गाः

---

**अमुष्याः**- स्त्रीलिङ्गमा अदस् शब्ददेखि ङसि आयो, अत्व पररूप टाप् दीर्घ भयो, 'अदा+अस' भयो, स्याट् आगम र आप्को हृस्व भयो, 'अदस्यास्' रुत्व, विसर्ग भयो । उत्व, मत्व, षत्व भयो, 'अमुष्याः' सिद्ध भयो । ङस्मा पनि यही प्रक्रियाले यही रूप हुन्छ ।

**अमुयोः**- स्त्रीलिङ्गमा अदस् शब्ददेखि ओस् आयो, अत्व पररूप टाप् दीर्घ भयो, 'आङि चापः'ले एकार भयो, 'अय् आदेश' भयो 'अदयोः' भयो, रुत्व, विसर्ग भयो, उत्व, मत्व भयो, 'अमुयोः' सिद्ध भयो । सप्तमीको द्विवचनमा पनि यही रूप हुन्छ ।

**अमूषाम्**- अदस् शब्ददेखि स्त्रीलिङ्गमा आम् आयो, अत्व पररूप् टाप् दीर्घ भयो, "आमि सर्वनाम्नः"ले सुट् भयो, 'अदासाम्' ऊत्व, मत्व भयो, 'अमूसाम्', "आदेशप्रत्यययोः"ले षत्व भयो, 'अमूषाम्' सिद्ध भयो ।

**अमुष्याम्**- स्त्रीलिङ्गमा अदस् शब्ददेखि ङि आयो, अत्व, पररूप, टाप्, दीर्घ भयो, स्याट्आगम र आप्को ह्रस्व भयो, 'अदस्याम्', उत्व, मत्व, षत्व भयो, 'अमुष्याम्' सिद्ध भयो ।

**अमूषु**- स्त्रीलिङ्गमा अदस् शब्ददेखि सुप् आयो, अत्व, पररूप, टाप्, दीर्घ भयो, 'अदासु' ऊत्व, मत्व, षत्व भयो, 'अमूषु' सिद्ध भयो ।

**अदस् शब्दका रूप-**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र. | असौ, | अमू, | अमूः |
| द्वि. | अमूम् | अमू | अमूः |
| तृ. | अमुया | अमूभ्याम् | अमूभिः |
| च. | अमुष्यै, | अमूभ्याम् | अमूभ्यः |
| प. | अमुष्याः | अमूभ्याम् | अमूभ्यः |
| ष. | अमुष्याः | अमुयोः | अमूषाम् |
| स. | अमुष्याम् | अमुयोः | अमूषु |

स्त्रीलिङ्गमा अदस् शब्दका औ, औट्, तीनवटा भ्याम् र दुई ओस् मा पुंलिङ्गमा जस्तै रूप हुन्छन् ।

**हलन्त स्त्रीलिङ्ग प्रकरण सकियो ।**

---

## अथ हलन्तनपुंसकलिङ्गाः

स्वमोर्लुक् । दत्वम् । स्वनडुत्, स्वनडुद् । स्वनडुही । चतुरनडुहोरित्याम् । स्वनड्वांहि । पुनस्तद्वत् । शेषं पुंवत् ॥ वाः । वारी । वारि । वार्भ्याम् ॥

---

**अब हलन्त नपुंसकलिङ्ग प्रकरण शुरू हुन्छ ।**

**स्वमोरिति–** नपुंसक लिङ्गमा 'सु' र 'अम्'को लुक् हुन्छ ।

**दत्वमिति–** स्वनडुह शब्दमा "वसुस्रंसुध्वंस्वनुडुहां दः०"ले दत्व हुन्छ ।

[६२] **स्वनडुह्–** (राम्रा गोरू भएको कुल) **स्वनडुत्-द्–** स्वनडुह् शब्ददेखि सु आयो, 'स्वनडुह्+स्' भयो, स्वमोर्नपुंसकात्"ले सुको लुक् भयो, "वसुस्रंसुध्वंस्वनडुहां दः"ले हकारका स्थानमा दकार भयो, चर्त्व भयो, 'स्वनडुत्', चर्त्व नभएको पक्षमा 'स्वनडुद्' यी दुइ रूप सिद्ध भए ।

**स्वनडुही–** स्वनडुह् शब्ददेखि औ आयो, "नपुंसकाच्च"ले औकारका स्थानमा शी भयो, 'स्वनडुही' सिद्ध भयो ।

**चतुरनडुहोरिति–** "चतुरनडुहोरामुदात्तः" यो सूत्रले आम्आगम हुन्छ ।

**स्वनड्वांही–** स्वनडुह शब्ददेखि जस् आयो, "जश्शसोः शिः"ले जस्का स्थानमा शिआदेश, "शि सर्वनामस्थानम्"ले शिको सर्वनामस्थानसंज्ञा, "चतुरनडुहोरामुदात्तः"ले आम् यण् आदेश भएपछि "नपुसंकस्य झलचः"ले नुम् भयो, 'स्वनड्वान्ह्+इ' भयो, नकारका स्थानमा अनुस्वार भयो, वर्णमेलन भयो, 'स्वनड्वांहि' सिद्ध भयो ।

**पुनस्तद्वत्–** फेरि पनि उस्तै हुन्छ । अम् औट् शस्मा पनि यस्तै हुन्छ । अर्थात् अम्को लुक् भएपछि सुमा झैं प्रक्रिया हुन्छ । औटमा "नपुंसकाच्च"ले शी भएपछि औको नै प्रक्रिया हुन्छ । शस्मा पनि "जश्शसोः०"ले शि भएपछि जस्कै प्रक्रिया हुन्छ ।

नपुंसक लिङ्गमा जुनसुकै शब्दमा पनि प्रथमा विभक्ति र द्वितीया विभक्तिका रूप समान हुन्छन् ।

**शेषं-पुवंत्–** बाँकी टा आदि विभक्तिमा पुंलिङ्गमा जस्तै प्रक्रिया हुन्छ । टा मा 'स्वनडुहा', भ्याम्मा "वसुस्रंसु०"ले दत्व हुन्छ, 'स्वनडुद्भ्याम्' हुन्छ । यस्तै अरू स्थलमा पनि जान्नू । पुनस्तद्वत् "शेषं पुंवत्" यो प्रक्रिया स्वनडुह् शब्दको मात्र हैन कि सम्पूर्ण क्लीबलिङ्गी शब्दको प्रक्रिया हो ।

**वाः–** वार् शब्ददेखि सु आयो, 'वार्+स्' भयो, "स्वमोर्नपुंसकात्"ले सुको लुक् भयो, रेफको विसर्ग भयो, 'वाः' सिद्ध भयो ।

**वारी–** वार् शब्ददेखि औ आयो, 'वार्+औ' औका स्थानमा शी आदेश भयो, 'वारी' सिद्ध भयो ।

**वारि–** वार् शब्ददेखि जस् आयो, जस्का स्थानमा शिआदेश भयो 'वारि' सिद्ध भयो ।

प्रथमामा जस्तै द्वितीयामा पनि यिनै रूप हुन्छन् ।

**वारा–** टामा 'वारा' हुन्छ ।

**वार्भ्याम्–** वार् शब्ददेखि भ्याम् आयो, 'वार्भ्याम्' सिद्ध भयो । यस्तै अरू विभक्तिमा पनि केही विशेषता छैन । सुप्मा "रोः सुपि"ले विसर्ग निषेध हुन्छ, षत्व, पनि हुन्छ, 'वार्षु' हुन्छ ।

---

६२ सुष्ठु अनड्वाहो यस्मिन्कुले इति विग्रहे 'सु+अनडुह्+जस्' बहुव्रीहिसमासे 'स्वनडुह्'शब्दो निष्पद्यते ।

चत्वारि ॥ किम् । के । कानि ॥ इदम् । इमे । इमानि ॥ **वा.** (अन्वादेशे नपुंसके वा एनद्वक्तव्यः) । एनत्, एनद् । एने ।

---

**चत्वारि-** चतुर् शब्ददेखि जस् आयो, "जश्शसोः शिः"ले शि आदेश भयो, "शि सर्वनाम स्थानम्"ले शिलाई सर्वनामस्थानसंज्ञा भयो, "चतुरनडुहोः०"ले आम् भयो, यण् भयो, 'चत्वारि' सिद्ध भयो । शस्मा पनि 'चत्वारि' हुन्छ । अरू विभक्तिमा पुलिङ्गमा जस्तै रूप हुन्छन् ।

**किम् शब्द-** (प्रश्नवाचक)

**किम्-** क्लीबत्वविवक्षामा किम् शब्ददेखि सु आयो, "सर्वविधिभ्यो लुग्विधिर्वलीयान्" यो न्याय लाएर सवभन्दा पहिलो "स्वमोर्नपुंसकात्"ले लुक् भयो, "प्रत्ययलोपे०" लगाएर "किमः कः"ले क आदेश पाएको "न लुमता०"ले निषेध भयो, 'किम्' सिद्ध भयो ।

**के-** क्लीबत्व विवक्षामा किम् शब्ददेखि औ आयो, "त्यदादीनामः"ले अत्व, पररूप भयो, "नपुंसकाच्च"ले औका स्थानमा 'शी' आदेश भयो, 'क+ई' भयो, गुण भयो, 'के' सिद्ध भयो ।

**कानि-** क्लीबत्व विवक्षामा किम् शब्ददेखि जस् आयो, "किमःकः"ले कआदेश भयो, जस्का स्थानमा "जश्शसोः शि"ले 'शि' आदेश भयो, शिको इ सर्वनामस्थान पर हुनाले "नपुंसकस्य झलचः"ले नुम् भयो, "सर्वनामस्थाने चा०"ले दीर्घ पनि भयो, 'कानि' सिद्ध भयो ।

("पुनस्तद्वत्,) अम्, औट्, शस्मा यही प्रक्रिया र उस्तै रूप हुन्छन् ।

**(शेषं पुंवत्-)** बाँकी टा देखि सुप्सम्म पुलिङ्गमा जस्तै प्रक्रिया र उस्तै रूप हुन्छन् ।

**इदम् शब्द**

**इदम्-** नपुंसक लिङ्गमा इदम् शब्ददेखि सु आयो, 'इदम्+स्' "स्वमोर्नपुंसकात्"ले सुको लुक् भयो, "प्रत्ययलोपे प्रत्ययलक्षणम्" लाएर "त्यदादीनामः"ले अत्व पायो "नलुमता०"ले निषेध भयो, "दश्च"ले पाएको मत्व पनि "नलुमता०"ले नै निषेध भयो, 'इदम्' सिद्ध भयो ।

**इमे-** इदम् शब्ददेखि औ आयो, "त्यदादीनामः"ले अत्व, पररूप भयो "नपुंसकाच्च"ले शी भयो, 'इद+इ' भयो, गुण भयो, 'इदे', 'दश्च'ले मत्व भयो, 'इमे' सिद्ध भयो ।

**इमानि-** इदम् शब्ददेखि जस् आयो, अत्व, पररूप, 'इद+अस्' भयो, जश्का स्थानमा शि आदेश भयो, सर्वनामस्थानसंज्ञा, नुम् भयो, 'इदन्+इ', उपधादीर्घ, 'इदानि' मत्व भयो, 'इमानि' सिद्ध भयो ।

**(पुनस्तद्वत्-)** अम्, औट्, शस्मा पनि इदम्, इमे, इमानि यिनै रूप हुन्छन् ।

**(शेषं पुंवत्-)** बाँकी पुलिङ्गमा जस्तै प्रक्रिया हुन्छ, रूप पनि उस्तै हुन्छन् । अन्वादेश अर्थ बुझिएमा भने विशेष प्रक्रिया छ ।

**वा. अन्वादेश इति-** अन्वादेश अर्थमा नपुंसक लिङ्गमा द्वितीया विभक्ति टा ओस् पर भएमा इदम् र एतद् शब्दका स्थानमा एनद् आदेश होस् भन्नु ।

**एनत्/द्-** अन्वादेश अर्थमा इदम् शब्ददेखि द्वितीयको एकवचन अम् आयो, 'इदम+अम्' भयो, वचनसामर्थ्यात् लुक् हुनुभन्दा पहिले इदम्का स्थानमा "अन्वादेशे नपुंसके"ले एनदआदेश भयो, अम्को लुक् भयो, चर्त्व भयो, 'एनत्', चर्त्व नभएका पक्षमा 'एनद्' यी दुई रूप सिद्ध भए ।

**एने-** अन्वादेश अर्थमा इदम् शब्ददेखि द्वितीया को द्विवचन औट् आयो, पूर्ववत् एनदआदेश, अत्व पररूप औका स्थानमा शी आदेश, गुण भयो, 'एने' सिद्ध भयो ।

**एनानि-** अन्वादेश अर्थमा इदम् शब्ददेखि 'शस्' आयो, पूर्ववत् एनद् आदेश अत्व पररूप शस्का स्थानमा शि आदेश सर्वनामस्थानसंज्ञा, नुम् उपधादीर्घ, भयो, 'एनानि' सिद्ध भयो ।

---

एनानि । एनेन । एनयोः ॥ अहः । "विभाषा ङिश्योः" । अह्नी, अहनी । अहानि ॥

**३६२. अहन् ८ । २ । ६८ ॥**

अहन्नित्यस्य रुः पदान्ते । अहोभ्याम् ॥ दण्डि ।

---

**एनेन**- अन्वादेश अर्थमा इदम् शब्ददेखि टा आयो, इदम्का स्थानमा 'एनद्'आदेश, अत्व पररूप टाका स्थानमा इनआदेश गुण भयो, 'एनेन' सिद्ध भयो ।

**एनयोः**- अन्वादेश अर्थमा इदम् शब्ददेखि ओस् आयो, एनद् आदेश अत्व, पररूप, एकार, अयादेश भयो, 'एनयोः' सिद्ध भयो ।

**अहन्**- (दिन) । **अहः**- अहन् शब्देखि सु आयो, लुक् भयो, अहन्का नकारका स्थानमा "रोऽसुपि"ले रेफादेश भयो, विसर्ग भयो, 'अहः' सिद्ध भयो ।

**अहनी**- अहन् शब्ददेखि औ आयो, "नपुंसकाच्च"ले शी आदेश भयो "अल्लोपोऽनः"लाई बाधेर "विभाषा ङिश्योः"ले वैकल्पिक अकार लोप भयो, 'अह्नी'सिद्ध भयो । लोप नभएका पक्षमा 'अहनी' सिद्ध भयो ।

**अहानि**- अहन् शब्ददेखि जस् आयो, जस्का स्थानमा शि भयो, शिको सर्वनामस्थानसंज्ञा, उपधा दीर्घ भयो, 'अहानि' सिद्ध भयो । द्वितीयामा पनि यस्तै प्रकारले यस्तै रूप हुन्छन् ।

**अहन्निति**- अहन् शब्दका नकारका स्थानमा रु आदेश होस् पदान्तमा ।

**अहोभ्याम्**- अहन् शब्ददेखि भ्याम् आयो, 'अहन्+भ्याम्' पदसंज्ञा भयो, "अहन्" यस सूत्रले नकारका स्थानमा रुत्व भयो, 'अहर्+भ्याम्' रेफका स्थानमा "हशि च"ले उत्व भयो, गुण भयो, 'अहोभ्याम्' सिद्ध भयो ।

यो अहन् शब्दमा टा आदि अजादि विभक्तिमा "अल्लोपोऽनः"ले अकारको लोप हुन्छ । ङि मा "विभाषा ङिश्योः"ले विकल्पले लोप हुन्छ । भ्याम्, भिस्, भ्यस्मा रुत्व, उत्व, गुण हुन्छ । सुप्मा रुत्व, विसर्ग भएपछि विसर्ग भएको यौटा रूप सकार भएको अर्को रूप यसरी दुई रूप हुन्छन् ।

**अहन् शब्दका रूप**-

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र. | अहः | अह्नी/अहनी | अहानी |
| द्वि. | अहः, | अह्नी/अहनी | अहानि |
| तृ. | अह्ना | अहोभ्याम् | अहोभिः |
| च. | अह्ने | अहोभ्याम् | अहोभ्यः |
| प. | अह्नः | अहोभ्याम् | अहोभ्यः |
| ष. | अह्नः | अह्नोः | अह्नाम् |
| स. | अह्नि/अहनि | अह्नोः | अहःसु/अहस्सु |
| स. | हे अहः ! | हे अह्नी/हे अहनी ! | हे अहानी ! |

**दण्डिन् शब्द**- (लौरो लिएको)

**दण्डि**- दण्डिन् शब्ददेखि सु आयो, दण्डिन् स् भयो, सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, नकारको "नलोपः प्रातिपदिकान्तस्य"ले लोप भयो, 'दण्डि' सिद्ध भयो ।

**दण्डिनी**- दण्डिन् शब्ददेखि औ आयो, शी आदेश भयो, 'दण्डिनी' सिद्ध भयो ।

**दण्डीनि**- दण्डिन् शब्ददेखि जस् आयो, शि आदेश भयो, 'दण्डिन्+इ' भयो, शिलाई सर्वनामस्थानसंज्ञा भएपछि "सर्वनामस्थाने०"ले उपधादीर्घ भयो, 'दण्डीनि' सिद्ध भयो । अम्

दण्डिनी । दण्डीनि । दण्डिना । दण्डिभ्याम् ॥ सुपथि । टेर्लोपः । सुपथी । सुपन्थानि ॥ ऊर्क्, ऊर्ग् । ऊर्जी । ऊर्न्जि । नरजानां संयोगः ।

---

औट् शस्मा पनि यिनै रूप भए ।

**सम्बुद्धाविति**- नपुंसकलिङ्गमा वर्तमान नकारान्त शब्दको संबुद्धिमा नकारको लोप विकल्पले होस् ।

**हे दण्डि / हे दण्डिन्**- दण्डिन् शब्ददेखि संबोधन अर्थमा प्रथमाको एकवचन सु आयो, लुक् भयो, "नलोपः प्रातिपदिकान्तस्य"ले नकारको लोप पाएको "न ङिसम्बुद्धयोः"ले निषेध भयो, अनि "संबुद्धौ नपुंसकानां०:" यो वार्तिकले नकारको लोप विकल्पले भयो, दण्डि हे शब्दको पूर्वप्रयोग भयो 'हे दण्डि', नकारको लोप नभएको पक्षमा 'हे दण्डिन्' यी दुई रूप सिद्ध भए ।

**दण्डिना**- दण्डिन् शब्ददेखि टा आयो, 'दण्डिना' सिद्ध भयो ।

**दण्डिभ्याम्**- दण्डिन् शब्ददेखि भ्याम् आयो, पदसंज्ञा "नलोपः प्रातिपदिकान्तस्य"ले नकारका लोप भयो, 'दण्डिभ्याम्' सिद्ध भयो ।

अजादि विभक्तिमा विशेष कार्य केही छैन हलादिमा नकारको लोप हुन्छ । सुप्मा "आदेशप्रत्यययोः"ले षत्व हुन्छ ।

**सुपथिन्**- (राम्रो बाटो भएकोशहर ।)

**सुपथि**- सुपथिन् शब्ददेखि सु आयो, लुक् भयो, 'सुपथिन्' यहाँ "प्रत्ययलोपे" लाएर पाएको [६३] आत्व, अत्व, न्थत्व सबै अङ्ग कार्य हुनाले "न लुमता०"ले निषेध भयो । नकारको "नलोपः प्रातिपदिकान्तस्य"ले लोप भयो, 'सुपथि' सिद्ध भयो ।

**सुपथी**- सुपिथन् शब्ददेखि औ आयो, 'सुपथिन्+औ' भयो, शीआदेश भयो, सुपथिन् ई भयो, भसंज्ञा भयो, "भस्य टेर्लोपः"ले टि (इन्)को लोप भयो, 'सुपथी' सिद्ध भयो ।

**सुपन्थानि**- सुपथिन् शब्ददेखि जस् आयो, जस्का स्थानमा शिआदेश भयो, शिको सर्वनामस्थानसंज्ञा भयो, "इतोऽत्०"ले सुपथिका इकारका स्थानमा अकार भयो, "थोन्थ"ले थका स्थानमा न्थ् आदेश भयो, "सर्वनामस्थाने०"ले दीर्घ भयो, 'सुपन्थान्+इ', 'सुपन्थानि' सिद्ध भयो ।

(पुनस्तद्वत् शेषं पुंवत्) अम्, औट्, शस्,मा यस्तै रूप र शेष रूप पुंलिङ्गमा जस्तै हुन्छन् ।

**ऊर्क् / र्ग**- उर्ज् शब्ददेखि सु आयो, लुक् भयो, 'उर्ज्' यसलाई पदसंज्ञा भयो । उर्ज् यहाँ "संयोगान्तस्य लोपः"ले जकारको लोप पाएको "रात्सस्य"ले निषेध भयो, जकारको "चो कुः"ले कुत्व भयो, "वाऽवसाने"ले चर्त्व भयो, उर्क्, चर्त्व नभएका पक्षमा 'उर्ग्' सिद्ध भयो ।

**ऊर्जी**- ऊर्ज् शब्ददेखि औ आयो, शी आदेश भयो, 'ऊर्जी' सिद्ध भयो ।

**उन्र्जि**- ऊर्ज् शब्ददेखि जस् आयो, जस्का स्थानमा शिआदेश भयो, सर्वनाम स्थानसंज्ञा भयो, "नपुंसकस्य झलचः"ले नुम् भयो, वर्णमेलन भयो, 'उन्र्जि' सिद्ध भयो ।

**नरजानामिति**- यहाँ र,न,जको संयोग 'उर्न्जि' यस्तो हैन, न,र,जको संयोग 'उर्न्जि'हो । किनकि नुम्को नकार ऊदेखि अव्यवहित पर ऊको आडमा छ । यसैकारण जकारको योग नकारलाई छैन र श्चुत्व भएर ञकार हुँदैन । अम् औट् शस्मा पनि यिनै रूप हुन्छन् । अरू विभक्तिमा पुंलिङ्गकै प्रक्रिया सम्झनु ।

**तत् / तद्**- नपुंसक लिङ्गमा तद् शब्ददेखि सु आयो, लुक् भयो, 'तद्' यहाँ "प्रत्ययलोपे"

---

६३ "पथिमथ्यृभुक्षामात्" यो सूत्रले आत्व, "इतोऽत्सर्वनामस्थाने" यो सूत्रले अत्व र "थोन्थः" यो सूत्रले न्थआदेश पाएको निषेध हुन्छ ।

तत् । ते । तानि ॥ यत् । ये । यानि ॥ एतत् । एते । एतानि ॥ गवाक्, गवाग् । गोची ।

लगाएर पाएको अत्व, सत्व सबै कार्य "न लुमता०"ले निषेध भयो । दकारको वैकल्पिक चर्त्व भयो, 'तत्', न भएमा 'तद्' यी दुई रूप सिद्ध भए ।

**ते-** नपुंसकलिङ्गमा तद् शब्ददेखि औ आयो, शीआदेश भयो, अत्व, पररूप, भयो, 'त+ई' गुण भयो, 'ते' सिद्ध भयो ।

**तानि-** नपुंसक लिङ्गमा तद् शब्ददेखि जस् आयो, शि आदेश, सर्वनाम स्थानसंज्ञा भयो, दकारको अत्व, पररूप भयो, 'त+इ' यहाँ "नपुंसकस्य झलचः"ले नुम् भयो, उपधादीर्घ भयो, 'तानि' सिद्ध भयो । (पुनस्तद्वत्, शेषं पुवत्) अम्, औट्शस्मा त्यस्तै प्रक्रियाद्वारा त्यस्तै रूप हुन्छन् । बाँकी टा आदिमा पुलिंगमा जस्तै प्रक्रिया र रूप पनि पुलिङ्गमा जस्तै हुन्छन् ।

यद् र एतद् शब्दमा पनि नपुंसकत्वको विवक्षा छ भन्ने स्मरण गरिरहनु पर्छ ।

**यत्/यद्, ये, यानि-** यी यद् शब्दका सु, औ, जस्का रूप हुन् । साधन प्रक्रियाको आफै ऊह गर्नू ।

**एतत्-द्, एते, एतानि-** यी एतद् शब्दका सु, औ, जस्का रूप हुन् रूपसाधन प्रक्रिया तद् शब्दको जस्तै हो । पुनस्तद्वत्, शेषं पुंवत्, यो नियम क्लीबलिङ्गमा सर्वत्र लाग्दछ ।

**चकारान्तशब्द गवाक्-** (गो अच्, गो अञ्च्, पृथ्वीमा हिंड्ने, गाईको पूजा गर्ने,)

**गाम्-** अञ्चति यस विग्रहमा गोङस् पूर्वमा हुने अञ्च धातुदेखि क्विन् प्रत्यय भयो, सर्वापहारी लोप भयो, समास, विभक्तिको लुक् भयो । गो अञ्च् भयो, कित् 'व्' प्रत्यय पर मानेर "अनिदितां हल उपधायाः०"ले नकारको लोप भयो, 'गो अच्' शव्द बन्यो । पूजा अर्थ बुझिदामा "नाञ्चेः पूजायाम्"ले नकार लोप निषेध भयो, गो अञ्च् शब्द बन्यो ।

**गवाक्/गवाग्, गोअक्/गोअग्, गोऽक्/गोऽग्-** गो शब्दपूर्वक गत्यर्थक अञ्च धातु अर्थात् गो अच् शब्ददेखि सु आयो, लुक् भयो, 'गो+अच्' यहाँ गोका ओकारका स्थानमा "अवङ्स्फोटायनस्य"ले अवङ् आदेश भयो, दीर्घ भयो, "चोः कु"ले चकारको कुत्व, जश्त्व, चर्त्व भयो, 'गवाक्', चर्त्व नभएमा 'गवाग्' यी दुई रूप सिद्ध भए । अवङ् आदेश नभएका पक्षमा "सर्वत्र विभाषा गोः"ले प्रकृतिभाव भयो, 'गो+अच्' यहाँ कुत्व, जश्त्व, चर्त्व भएपछि 'गोअक्' चर्त्व नभएमा 'गोअग्' यी दुई रूप सिद्ध भए । प्रकृति भाव नभएको पक्षमा "एङः पदान्तादति"ले पूर्वरूप भयो, गोऽच् यहाँ पूर्ववत् कुत्व, जश्त्व र चर्त्व भयो, 'गोऽक्' चर्त्व नभएमा 'गोऽग्' यी दुई रूप सिद्ध भए, यसरी गत्यर्थकमा छ रूप भए ।

**गवाङ्/गोअङ/गोऽङ्-** पूजार्थक गोपूर्वक अञ्च धातु अर्थात् गो अञ्च् शब्ददेखि सु आयो, लुक् भयो, 'गो+अञ्च्' यहाँ पूर्ववत् अवङ् आदेश भयो, दीर्घ भयो, 'गवाञ्च्' संयोगान्त लोप, नकारको कुत्व 'गवाङ्' सिद्ध भयो । अवङ् नभएका पक्षमा प्रकृतिभाव भयो, 'गो+अञ्च्' यहाँ चकारको संयोगान्तलोप नकारको कुत्व 'गो+अङ्' सिद्ध भयो । प्रकृतिभाव नभएको पक्षमा पूर्वरूप संयोगान्तलोप नकारको कुत्व 'गोऽङ्' यसरी पूजा अर्थमा ३ रूप भए ।

**गोची-** गत्यर्थक गोपूर्वक अञ्च धातु अर्थात् 'गो+अच्'देखि औ आयो, औका स्थानमा शी आदेश भयो, 'गो+अच्+ई' यहाँ 'गो+अच्'लाई भसंज्ञा भयो, "अचः"ले अकारको लोप भयो, 'गोची' सिद्ध भयो ।

**गवाञ्ची/गो अञ्ची/गोऽञ्ची-** पूजार्थक गो शब्द पूर्वक अञ्चधातु अर्थात् गो अञ्च् शब्ददेखि औ आयो, औको स्थानमा शी आदेश भयो, 'गो+अञ्च+ई' भयो, एकपक्षमा अवङ् आदेश दीर्घ भयो, 'गवाञ्ची' भयो । अवङ् नभएको पक्षमा प्रकृति भाव भयो, 'गोअञ्ची' भयो ।

गवाञ्चि । पुनस्तद्वत् । गोचा । गवाग्भ्याम् ॥

---

प्रकृतिभाव नभएको पक्षमा पूर्वरूप भयो, 'गोऽञ्ची' यसरी तीन रूप सिद्ध भए ।

**गवाञ्चि / गो अञ्चि / गोञ्चि-** गत्यर्थकगो शब्दपूर्वक अञ्चधातु अर्थात् 'गो+अच्'शब्ददेखि जस् आयो, शिआदेश भयो, शिलाई सर्वनामस्थानसंज्ञा भयो, "उगिदचां०"ले नुम् भयो, अनुस्वार परसवर्ण भयो, 'गो+अञ्च्+इ' भयो, पूजार्थकमा पनि गो अञ्च् शब्ददेखि जस् आयो, शि आदेश भयो, 'गो+अञ्च्+इ' नै भयो, दुवै पक्षमा वैकल्पिक अवङ् भयो, दीर्घ भयो, 'गवाञ्चि' सिद्ध भयो । अवङ् नभएका पक्षमा वैकल्पिक प्रकृतिभाव भयो, 'गो अञ्चि' भयो । प्रकृतिभाव नभएका पक्षमा पूर्व रूप भयो, 'गोऽञ्चि' भयो, यसरी दुवै पक्षमा ३ रूप भए । अम् औट् शस्मा पनि सु, औ, जस्मा जस्तै रूप हुन्छन् ।

**गोचा-** गत्यर्थक गोअच् शब्ददेखि टा आयो, 'गो+अच्+आ' भयो, भसंज्ञकअच्का अकारको लोप भयो, 'गोचा' सिद्ध भयो ।

**गवाञ्चा / गो-अञ्चा / गोऽञ्चा-** पूजार्थक गोअञ्च् शब्ददेखि टा आयो, 'गो+अञ्च्+आ' भयो, 'गो+अञ्च्+आ' यहाँ पूर्ववत् अवङ्, प्रकृतिभाव र पूर्व रूप हुँदा 'गवाञ्चा', 'गो अञ्चा' 'गोऽञ्चा' यी तीन रूप सिद्ध भए ।

यस्तै प्रकारले सम्पूर्ण शस् आदि अजादि विभक्तिमा गत्यर्थक गो अच् शब्दका एक-एक रूप र पूजार्थक 'गोअञ्च्'शब्दका तीन-तीन रूप हुन्छन् ।

**गवाग्भ्याम् / गो अग्भ्याम् / गोऽग्भ्याम्-** गत्यर्थक गोअच् शब्ददेखि तृतीयाको द्विवचन भ्याम् आयो, 'गो+अच्+भ्याम्' भयो, 'गो+अच्+भ्याम्' यहाँ पूर्ववत् क्रमशः अवङ्, प्रकृतिभाव र पूर्वरूप हुँदा 'गवाच्भ्याम्', 'गोअच्भ्याम्', 'गोच्भ्याम्', तीनै ठाउँमा "क्विन्प्रत्यस्य०"लाई बाधेर "चोः कुः"ले कुत्व भयो, जश्त्व भयो, 'गवाग्भ्याम्', 'गोअग्भ्याम्', 'गोग्भ्याम्' यी तीन रूप सिद्ध भए ।

**गवाङ्भ्याम् / गोअङ्भ्याम् / गोऽङ्भ्याम्-** पूजार्थक गोअञ्च् शब्ददेखि भ्याम् आयो, 'गो+अञ्च्+भ्याम्' भयो, 'गो+अञ्च्' यहाँ पूर्ववत् क्रमशः अवङ्आदेश, प्रकृतिभाव र पूर्वरूपका भेदले 'गवाञ्च्भ्याम्', 'गोअञ्च्भ्याम्', 'गोऽञ्च्भ्याम्', यी तीनै स्थलमा चकारको संयोगान्तलोप भयो, "निमित्तापाये०" लगाएर ञकारको नकार भयो नकारको "क्विन्प्रत्ययस्य कुः"ले कुत्व भयो, 'गवाङ्भ्याम्', 'गोअङ्भ्याम्', 'गोऽङ्भ्याम्' यी तीन रूप सिद्ध भए । यस्तै प्रकारले भिस्, भ्यस् र अरू भ्याम्मा पनि गत्यर्थक र पूजार्थक गरेर छ, छ, रूप हुन्छन् ।

**गवाक्षु / गोअक्षु / गोऽक्षु-** गत्यर्थक गोअच् शब्ददेखि सुप् आयो, 'गो+अच्+सु' भयो, 'गो+अच्+सु' यहाँ अवङ्, प्रकृतिभाव र पूर्वरूप हुँदा क्रमशः 'गवाच्+सु', 'गोअच्+सु', 'गोऽच्+सु', भयो, यी तीनै स्थलमा "क्विन्प्रत्ययस्य कुः"लाई बाधेर "चोः कुः"ले कुत्व, "आदेश प्रत्यययोः"ले सुका सकारका स्थानमा षत्व कषसंयोग भएर क्षत्व भयो, 'गवाक्षु', 'गोअक्षु', 'गोऽक्षु' यी तीन रूप सिद्ध भए ।

**गवाङ्खषु / गोअङ्खषु / गोऽङ्खषु / गवाङ्क्षु / गोअङ्क्षु / गोऽङ्क्षु / गवाङ्षु / गोअङ्षु / गोऽङ्षु / गोङ्षु-** पूजार्थमा गो अञ्च् देखि सुप् आयो, 'गो+अञ्च्+सु' भयो 'गो+अञ्च्' यहाँ अवङ् प्रकृतिभाव र पूर्वरूप हुँदा क्रमशः 'गवाञ्च्+सु', 'गोअञ्च्+सु' 'गोऽञ्च्+सु' भयो, तीनै स्थलमा चकारको संयोगान्तलोप भयो ञकारको "निमित्तापाये०" ले नकार भयो "क्विन्प्रत्ययस्य कुः" ले कुत्व भएर नकारको ङकार भयो । सुप्का सकारको "आदेशप्रत्यययोः"ले षत्व भयो, 'गवाङ्+षु' 'गो+अङ्षु' 'गोऽङ्षु' भयो, यहाँ तीनै स्थलमा "ङ्णोः कुक् टुक्०" ले कुक् आगम "चयो द्वितीया०" ले ककारको खकार भयो । 'गवाङ्खषु', 'गोअङ्खषु', 'गोऽङ्खषु', यी तीन रूप सिद्ध भए । द्वितीय

आदेश नभएको पक्षमा कषसंयोग भएर क्षत्व भयो, 'गवाङ्क्षु' 'गो अङ्क्षु' 'गोऽङ्क्षु' यी तीन रूप सिद्ध भए । कुक् आगम नभएको पक्षमा 'गवाङ्षु', 'गोअङ्षु', 'गोऽङ्षु' तीन रूप सिद्ध भए ।

गवाक्शब्दस्य रूपाणि क्लीबेऽर्चागतिभेदतः ।
असन्ध्यवङ्पूर्वरूपैर्नवाधिकशतं (१०९) मतम् ॥१॥
स्वम्सुप्सु नव षड् भादौषट्के स्युस्त्रीणि जश्शसोः ।
चत्वारि शेषे दशके रूपाणीति विभावय ॥२॥

क्लीबे गवाक्शब्दस्य रूपाणि अर्चागतिभेदतः असन्ध्यवङ्पूर्वरूपैः-अवङ्प्रकृतिभावपूर्वरूपप्रक्रियाभिः, नवाधिकशतम् मतम् । तत्र स्वम्सुप्सु= सु-अम्-सुप्विभक्तिषु नव (९×३=२७) भादौ षट्के षट् (६×६=३६) जश्शसोः त्रीणि (३×२=६) शेषे दशके=औ, औट्, टा, ङे, ङसि, ङस्, ङि, ओस्, आम्, ओस्, एतासु दश विभक्तिसु, चत्वारि (४×१०=४०) रूपाणि इति विभावय=विचारय इत्यर्थः । सङ्कलने २७+३६+६+४०=१०९ भवन्ति ।

अर्थ- नपुंसक लिङ्गमा पूजार्थक र गत्यर्थक अञ्च धातुका भेदले गवाक् शब्दका १०९ रूप हुन्छन् । त्यसमध्ये सु, अम् र सुप् यी तीन विभक्तिमा नौ नौ रूप हुन्छन् । भकारादि छ विभक्ति अर्थात् भ्याम्, भिस्, भ्याम्, भ्यस्, भ्याम्, भ्यस्, यी छ विभक्तिमा छ-छ वटा रूप हुन्छन् । जस् र शस्मा तीन-तीन रूप हुन्छन् । बाँकी दश विभक्ति अर्थात् औ, औट्, टा, ङे, ङसि, ङस्, ङि, ओस्, आम्, ओस् यी विभक्तिमा चार चार रूप हुन्छन् भन्ने अड्कल गर । सङ्कलन गर्दा सु, अम् र सुप्मा नौ नौ का दरले नौतियाँ=२७ रूप, भकारादि विभक्तिमा छ छक्का=३६ र जस् र शस्मा दुईतियाँ=६, बाँकी दश विभक्तिमा दश चौको चालीस=४०, जम्मा १०९ रूप भए । यहाँ "चयो द्वितीयाः०"ले द्वितीया आदेश भएर हुने ३ रूपको गिन्ती गरेको छैन । ती तीन रूप जोड्दा ११२ रूप हुन्छन् ।

**गवाक् शब्दका रूप- (सात विभक्तिका २१ वचनमा बेग्लाबेग्लै)**

| गत्यर्थक | | पूजार्थक | |
|---|---|---|---|
| सु- गवाक् गवाग्, गोअक् गो अग्, गोऽक् गोऽग् | ६ | गवाङ्, गोअङ्, गोऽङ् | ३ |
| औ- गोची | १ | गवाञ्ची गोअञ्ची गोऽञ्ची | ३ |
| जस्- गवाञ्चि गोअञ्चि गोऽञ्चि | ३ | गवाञ्चि गोअञ्चि गोऽञ्चि | ३ |
| अम्- गवाक् गवाग्, गोअक् गो अग्, गोऽक् गोऽग् | ६ | गवाङ्, गोअङ्, गोऽङ् | ३ |
| औट्- गोची | १ | गवाञ्ची गोअञ्ची गोऽञ्ची | ३ |
| शस्- गवाञ्चि गोअञ्चि गोऽञ्चि | ३ | गवाञ्चि गोअञ्चि गोऽञ्चि | ३ |
| टा- गोचा | १ | गवाञ्चा गोअञ्चा गोऽञ्चा | ३ |
| भ्याम्- गवाग्भ्याम्, गो अग्भ्याम्, गोऽग्भ्याम् | ३ | गवाङ्भ्याम्, गो अङ्भ्याम्, गोऽङ्भ्याम् | ३ |
| भिस्- गवाग्भिः, गोअग्भिः, गोऽग्भिः | ३ | गवाङ्भिः, गोअङभिः, गोऽङ्भिः | ३ |
| ङे- गोचे | १ | गवाञ्चे, गोअञ्चे, गोऽञ्चे | ३ |
| भ्याम्- गवाग्भ्याम्, गो अग्भ्याम्, गोऽग्भ्याम् | ३ | गवाङ्भ्याम्, गो अङ्भ्याम्, गोऽङ्भ्याम् | ३ |
| भ्यस्- गवाग्भ्यः, गो अग्भ्यः, गोऽग्भ्यः | ३ | गवाङ्भ्यः, गो अङ्भ्यः, गोऽङ्भ्यः | ३ |
| ङसि- गोचः | १ | गवाञ्चः, गोअञ्चः, गोऽञ्चः | ३ |

शकृत् । शकृती । शकृन्ति ॥ ददत् ॥

**३६३. वा नपुंसकस्य ७ । १ । ७९ ॥**

अभ्यस्तात्परो यः शता तदन्तस्य क्लीबस्य वा नुम् सर्वनामस्थाने । ददन्ति, ददति ॥

| | | | |
|---|---|---|---|
| भ्याम्- गवाग्भ्याम्, गो अग्भ्याम्, गोऽग्भ्याम् | ३ | गवाङ्भ्याम्, गो अङ्भ्याम्, गोऽङ्भ्याम् | ३ |
| भ्यस्- गवाग्भ्यः, गो अग्भ्यः, गोऽग्भ्यः | ३ | गवाङ्भ्यः, गो अङ्भ्यः, गोऽङ्भ्यः | ३ |
| ङस्- गोचः | १ | गवाञ्चः, गोअञ्चः, गोऽञ्चः | ३ |
| ओस्- गोचोः | १ | गवाञ्चोः, गोअञ्चोः, गोऽञ्चोः | ३ |
| आम्- गोचाम् | १ | गवाञ्चाम्, गोअञ्चाम्, गोऽञ्चाम् | ३ |
| ङि- गोचि | १ | गवाञ्चि, गो अञ्चि, गोऽञ्चि | ३ |
| ओस्- गोचोः | १ | गवाञ्चोः, गोअञ्चोः, गोऽञ्चोः | ३ |
| सुप्- गवाक्षु गोअक्षु गोऽक्षु | ३ | गवाङ्खषु गोअङ्खषु गोऽङ्खषु | ३ |
| | | गवाङ्क्षु गोअङ्क्षु गोऽङ्क्षु | |
| | | गवाङ्षु गोअङ्षु गोऽङ्षु | ९ |
| | ४९ | | ६३ |

४९+६३=११२

**शकृत्** (विष्ठा)

**शकृत्-द्** शकृत् शब्ददेखि सु आयो, लुक् भयो तकारको जश्त्व, चर्त्व, 'शकृत्', 'शकृद' दुई रूप सिद्ध भए ।

**शकृती-** शकृत् शब्ददेखि औ आयो, औका स्थानमा शी आदेश भयो 'शकृती' सिद्ध भयो ।

**शकृन्ति-** शकृत् शब्ददेखि जस् आयो, जस्का स्थानमा शि आदेश भयो, "नपुंसकस्य झलचः"ले नुम् भयो, '**शर्कृन्ति**' सिद्ध भयो ।

**पुनस्तद्वदिति- अम्, औद्,** शस्मा यस्तैप्रकारले यिनै रूप हुन्छन् र टा आदि विभक्तिमा बाँकी पुंलिङ्गमा तकारान्त **महत्** शब्दमा जस्तै प्रक्रिया हुन्छ, रूप पनि तत्सदृश हुन्छन् ।

**ददत्/ददद्-** (दिनेवाला) ददत् शब्ददेखि सु आयो, लुक् भयो जश्त्व, भयो, चर्त्व, भयो 'ददत्' चर्त्व नभएका पक्षमा 'ददद्' यी दुई रूप सिद्ध भए ।

**ददती-** ददत् शब्ददेखि औ आयो, शी आदेश भयो 'ददती' सिद्ध भयो ।

**वा नपुंसकस्येति-** अभ्यस्तसंज्ञक धातुदेखि पर रहेको जो शतृ प्रत्यय छ, तदन्त क्लीब लिङ्गमा वर्तमान शब्दको विकल्पले नुम् होस् सर्वनाम स्थान पर भएमा ।

**ददन्ति/ददति-** ददत् शब्ददेखि जस् आयो, जस्का स्थानमा शि आदेश भयो, शिलाई सर्वनामस्थानसंज्ञा भयो, दद्लाई "उभे अभ्यस्तम्"ले अभ्यस्तसंज्ञा भयो, "उगिदचां०"ले नुम् पाएको "नाभ्यस्ताच्छतुः" ले निषेध भयो, भएपछि "नपुंसकस्य" झलचः"लाई बाधेर "वा नपुंसकस्य"ले ददत् यहाँ अभ्यस्तसंज्ञक धातु दद्देखि पर रहेको शतृप्रत्यय छ र तदन्त अङ्ग ददत्को नुम् भयो "मिदचो०"ले ददका अकारदेखि पर 'न्' भयो, 'ददन्ति' सिद्ध भयो । नुम् नभएका पक्षमा 'ददति' सिद्ध भयो ।

(पुनस्तद्वत् शेषं पूवत्) अम् औट् शस्मा ददत्-द्, ददती, ददन्ति ददति, यी रूप हुन्छन् शेष टा आदि विभक्तिमा पुंलिङ्ग ददत् शब्दमा जस्तै प्रक्रिया र रूप हुन्छन् ।

तुदत् ॥

**३६४. आच्छीनद्योर्नुम् ७ । १ । ८० ॥**

अवर्णान्तादङ्गात्परो यः शतुरवयवस्तदन्तस्य नुम् वा शीनद्योः । तुदन्ती, तुदती । तुदन्ति ॥

---

**तुदत्** (दुःख दिने कण्टक आदि) तुदत् शब्ददेखि सु आयो, लुक् भयो जश्त्व चर्त्व भयो 'तुदत्-द्' सिद्ध भयो ।

**आच्छीति**- अवर्णान्त[६४] अङ्गदेखि पर रहेको जो शतृ प्रत्ययको अवयव तदन्त अङ्गको नित्य नुम् होस् शी र नदीसंज्ञक शब्द परभएमा

**तुदन्ती/ती**- तुदत् शब्ददेखि औ आयो शी आदेश भयो 'तुदत्+ई' भयो 'आच्छीनद्योर्नुम्'ले अवर्णान्त अङ्ग तुद्देखि पर शतृको अवयव 'त्' छ तदन्त अङ्ग तुदत् छ शीपर छ ई र तुदत्को वैकल्पिक नुम् भयो, "मिदचो०" लाएर तुद्का अकारदेखि पर न् भयो वर्णमेलन भयो, 'तुदन्ती', नुम् नभएमा 'तुदती' यी दुई रूप सिद्ध भए ।

**तुदन्ति**- तुदत् शब्ददेखि जस् आयो शि भयो सर्वनामस्थानसंज्ञा भयो "नपुंसकस्य झलचः" ले नुम् भयो, वर्णमेलन भयो, 'तुदन्ति' सिद्ध भयो ।

**(पुनस्तद्वत् शेषं पुंवत्-)** अम्, औट्, शस्मा सु, औ, जस्मा जस्तै हुन्छ । टा आदि विभक्तिमा पुंलिङ्गका ददत् शब्दका जस्तै रूप हुन्छन् ।

**पचत् पचद्**- पचत् शब्ददेखि सु आयो, "स्वमोर्नपुंसकात्"ले लुक् भयो, जश्त्व, चर्त्व भयो, 'पचत्' सिद्ध भयो । चर्त्व नभएमा 'पचद्' सिद्ध भयो ।

**शप्श्यनोरिति**- शप् र श्यन्को अवर्णदेखि पर रहेको जो शतृ प्रत्ययको अवयव तदन्त अङ्गको नित्य नुम् होस् शी र नदीसंज्ञकशब्द पर भएमा ।

**"आच्छीनद्योर्नुम्", "शप्श्यनोर्नित्यम्" यी दुई सूत्रको आशय**- अवर्णान्त अङ्गदेखि पर रहेको शतृ प्रत्ययको अवयव भ्वादि, दिवादि, तुदादि, चुरादिका धातुदेखि र ण्यन्त धातुदेखि शतृ प्रत्यय गरेको स्थलमा पाइन्छ । भ्वादिमा शप्को अवर्ण, दिवादिमा श्यन्को अवर्ण, तुदादिमा शको अवर्णदेखि पर रहेको त् शतृ प्रत्ययको अवयव हुन्छ । पररूप भएको अकार "अन्तादिवच्च"ले पूर्वान्तवद्भाव हुँदा त्लाई पर राखेर अवर्णान्त अङ्ग बन्दछ । जस्तै- भ्वादिमा पचत्मा पच, दिवादिमा दीव्यत्मा दिव्य, तुदादिमा, तुदत्, यहाँ तुद, चुरादिमा चोरयत्मा चोरय, ण्यन्तमा गमयत्मा गमय अवर्णान्त अङ्ग हुन्छन् ।

धातु र शतृ प्रत्ययको बीचमा शप् प्रत्यय भएर बनेका भवत्, गच्छत्, व्रजत्, रक्षत् जीवत्, द्योतत्, पचत् आदि शब्ददेखि नपुंसकलिङ्गमा औका स्थानमा आदेश भएको शी पर भएमा नित्य नुम् हुन्छ भवन्ती, गच्छन्ती, व्रजन्ती रक्षन्ती, जीवन्ती, द्योतन्ती, पचन्ती आदि रूप हुन्छन् । त्यस्तै स्त्रीत्व विवक्षामा ङीप् गर्दा पनि यिनै रूप भएका गच्छन्ती, व्रजन्ती रक्षन्ती जीवन्ती आदि शब्द बन्दछन् । धातु र शतृका बीचमा श्यन् प्रत्यय भएर बनेका दीव्यत्, नृत्यत्, तृप्यत् शब्ददेखि शी पर भएमा पूर्ववत् क्रमशः दीव्यन्ती, नृत्यन्ती, तृप्यन्ती, यी रूप बन्दछन् । त्यस्तै

---

६४ तुद (व्यथने)धातुदेखि शतृ प्रत्यय भयो, "तुदादिभ्यः शः"ले शप्रत्यय भयो, 'तुद+अत्' भयो, यहाँ "अतो गुणे"ले पररूप भएर 'तुदत्'शब्द बन्यो, यहाँ "अन्तादिवच्च"ले पूर्वान्तवद्भाव हुँदा तुद यो अवर्णान्त अङ्ग हुन्छ, उता शतृ प्रत्ययको अवयव त् मात्र बाँकी रहन्छ । यहाँ पुनः परादिवद्भाव हुन सक्दैन "उभयत आश्रयणे नान्तादिवत्"ले निषेध गर्छ । त्यसैकारण शतृ प्रत्ययको अवयव भनिएको छ । पचत्, दीव्यत्, भवत् शब्दमा पनि "अन्तादिवच्च" लाएर पच, दीव्य, भव यो शप् प्रत्यय र श्यन् प्रत्ययको अवर्ण मानिन्छ ।

**३६५. शप्श्यनोर्नित्यम् ७ । १ । ८१ ॥**

शप्श्यनोरात्परो यः शतुरवयवस्तदन्तस्य नित्यं नुम् शीनद्योः । पचन्ती । पचन्ति ॥ दीव्यत् । दीव्यन्ती । दीव्यन्ति ॥ धनुः ।

---

स्त्रीत्व विवक्षामा डीप् प्रत्यय गरेमा दीव्यन्ती, नृत्यन्ती, तृप्यन्ती शब्द बन्दछन् । यस्तै अरू दैवादिक धातुमा पनि जान्नू ।

अब चुरादिका णिजन्त धातु र प्रेरणार्थक णिजन्त धातुदेखि शतृप्रत्यय गर्दा पनि बीचमा शप्प्रत्यय हुने हुँदा चोरयत् गमयत् इत्यादि स्थलमा पनि शप्को अवर्णदेखि पर रहेको शतृप्रत्ययको अवयव 'त्' हुन्छ तदन्त अङ्ग चोरयत्, गमयत् आदि हुन्छ र यी शब्दको नपुंसक लिङ्गको शी पर भएमा चोरयन्ती, गमयन्ती आदि नित्यनुम् भएका रूप बन्दछन् ।

स्त्रीत्व विवक्षामा डीप् भएमा पनि चोरयन्ती, गमयन्ती इत्यादि नित्य नुम् भएका शब्द बन्दछन् । यसदेखि बाहेक अदादि, जुहोत्यादि, स्वादि, रुधादि, तनादि, क्र्यादि गणपठित धातुमा पूर्वान्तवद्भाव गर्दा अवर्णान्त अङ्ग हुँदैन र नुम् हुँदैन ।

तुदादिगणपठित धातुदेखि शतृ प्रत्यय गरेर बनेका तुदत्, मृडत्, पृडत्, इच्छत्, विशत्, पृशत् इत्यादि शब्ददेखि नपुंसकत्व विवक्षामा औका स्थानमा आदेश भएको शी पर भएमा नुम् विकल्पले हुन्छ र तुदन्ती, तुदती, मृडन्ती मृडती, इच्छन्ती इच्छती, यी दुई दुई रूप हुन्छन् । त्यस्तै स्त्रीत्व विवक्षामा तुदत्, मृडत्, पृडत्, इच्छत् आदि शब्ददेखि "उगितश्च"ले डीप् हुन्छ त्यो डीप्को ई नदी संज्ञक हुन्छ, त्यो पर भएमा पनि तुदन्ती/तुदती, मृडन्ती मृडती,पृडन्ती पृडती, इच्छन्ती/इच्छती यस्ता दुइदुई शब्द बन्दछन् ।

**पचन्ती**– पचत् शब्ददेखि औ आयो, औका स्थानमा शी आदेश भयो, 'पचत्+ई' भयो, "आच्छीनद्योर्नुम्"ले वैकल्पिक नुम् पायो, त्यसलाई बाधेर "शप्श्यनोः"ले नित्य नुम् भयो, 'पचन्ती' सिद्ध भयो ।

**पचन्ति**– पचत् शब्ददेखि जस् आयो, जस्का स्थानमा शिआदेश भयो, सर्वनामस्थान संज्ञा भयो, "उगिदचां०"लाई बाधेर "नपुंसकस्य झलचः"ले नुम् भयो, 'पचन्ति' सिद्ध भयो ।

औट् र शसमा औ र जस्मा जस्तै र टादि विभक्तिमा धीमत् शब्द जस्तै हुन्छ ।

**दीव्यत्** (खेल्दैरहेको) दीव्यत् शब्ददेखि सु आयो, "स्वमोर्नपुंसकात्"ले लुक् भयो, जश्त्व, चर्त्व भयो, 'दीव्यत्' सिद्ध भयो । चर्त्व नभएमा 'दीव्यद्' सिद्ध भयो ।

**दीव्यन्ती**– दीव्यत् शब्ददेखि औ आयो, शी भयो "आच्छीनद्योः"लाई बाधेर "शप्श्यनोः"ले नित्य नुम् भयो, 'दीव्यन्ती' सिद्ध भयो ।

**दीव्यन्ति**– दीव्यत् शब्ददेखि जस् आयो, शि आदेश, सर्वनामस्थासंज्ञा "उगिदचां०"लाई बाधेर "नपुंसकस्य झलचः"ले नुम् भयो, 'दीव्यन्ति' सिद्ध भयो । सु र अम्मा पनि सुमा जस्तै प्रक्रिया भएर समान रूप हुन्छ । औ र जस्मा जस्तै औट् शसका रूप हुन्छन् । अन्यत्र पुंलिङ्गको धीमत् शब्द जस्तै हुन्छ ।

**धनुष्** (धनु) **धनुः**– धनुप् शब्ददेखि सु आयो, लुक् भयो "आदेशप्रत्यययोः"ले गरेको षत्व "ससजुषो रुः"ले असिद्ध देख्यो र धनुष् षकारका स्थानमा रुत्व भयो, विसर्ग भयो, 'धनुः' सिद्ध भयो ।

**धनुषी**– धनुष् शब्ददेखि औ आयो, औका स्थानमा शी भयो, 'धनुषी' सिद्ध भयो ।

**सान्तेति**– धनुष् शब्दको जस्मा नुम् भएपछि "सान्तमहतः०"ले दीर्घहुन्छ, "नुर्म्विसर्जनीय०"ले षत्व हुन्छ ।

धनुषी । सान्तेति दीर्घः । नुम्विसर्जनीयेति षः । धनूंषि । धनुषा । धनुर्भ्याम् । एवं चक्षुर्हविरादयः ॥ पयः । पयसी । पयांसि । पयसा । पयोभ्याम् ॥

---

**धनूंषि**– धनुष् शब्ददेखि जस् आयो, जस्का स्थानमा शि भयो, सर्वनाम स्थानसंज्ञा भयो, "नपुंसकस्य झलचः"ले नुम् भयो, 'धनुन्ष्+इ' भयो, मूर्धन्य षकारको "निमित्तापाये०" लाएर सकार भयो, तब "सान्तमहतः"ले धनुका उकारका स्थानमा दीर्घ ऊकार भयो, अनुस्वार भयो, 'धनूंसि' भयो, धनूंसि यहाँ इण् प्रत्ययाहार धनूका उकारदेखि पर नुम्स्थानिक अनुस्वारले व्यवधान भएकोले "नुम्विसर्जनीयः०"ले सकारको षत्व भयो, 'धनूंषि' सिद्ध भयो । यस्तै प्रकारले अम्, औट्, शस्मा पनि रूप सिद्ध हुन्छन् ।

**धनुषा**– धनुष् शब्ददेखि टा आयो, 'धनुषा' सिद्ध भयो । अजादि विभक्तिमा वर्णमेलन र विभक्ति कार्यबाहेक अरू केही विशेष कार्य छैन ।

**धनुर्भ्याम्**– धनुष् शब्ददेखि भ्याम् आयो, षत्व असिद्ध भएर सकार देखेकोले "ससजुषो रुः"ले रुत्व भयो, 'धनुर्भ्याम्' सिद्ध भयो । भिस्, भ्यस्मा पनि यसैगरी रूप सिद्ध हुन्छन् ।

**धनुष् शब्दका रूप**

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन | विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|---|---|---|
| **प्र.** | धनुः | धनुषी | धनूंषि | **द्वि.** | धनुः | धनुषी | धनूंषि |
| **तृ.** | धनुषा | धनुर्भ्याम् | धनुर्भिः | **च.** | धनुषे | धनुर्भ्याम् | धनुर्भ्यः |
| **प.** | धनुषः | धनुर्भ्याम् | धनुर्भ्यः | **ष.** | धनुषः | धनुषोः | धनुषाम् |
| **स.** | धनुषि | धनुषोः | धनुःषु धनुष्षु | **सं.** | हे धनुः ! | हे धनुषी ! | हे धनूंषि ! |

**एवमिति**– यस्तै प्रकारले चक्षुष् (आँखा), हविष् (होम गरिने वस्तु), जनुष् (जन्म), रोचिष् (प्रकाश) आदि शब्द पनि जान्नू ।

**सकारान्त पयस्**- (जल अथवा दूध)

**पयः**– पयस् शब्ददेखि सु आयो, लुक् भयो, सकारको रुत्व विसर्ग भयो, 'पयः' सिद्ध भयो ।

**पयसी**– पयस् शब्ददेखि औ आयो, औका स्थानमा शी भयो, 'पयसी' सिद्ध भयो ।

**पयांसि**– पयस् शब्ददेखि जस् आयो, जस्का स्थानमा शि भयो, सर्वनामस्थानसंज्ञा भएपछि "नपुंसकस्य झलचः"ले नुम् भयो, 'पयन्स्+इ' भयो, "सान्तमहतः०"ले दीर्घ भयो, "नश्चापदान्तस्य०" नकारको अनुस्वार भयो, 'पयांसि' सिद्ध भयो । अम् औट् शस्मा पनि सु औ जस्मा जस्तै रूप हुन्छन् ।

**पयसा**– पयस् शब्ददेखि टा आयो, 'पयसा' सिद्ध भयो । टामा जस्तै अन्य अजादि विभक्तिमा वर्णसंयोग र विभक्तिकार्यबाहेक अरू केही विशेष कार्य हुँदैन ।

**पयोभ्याम्**– पयस् शब्ददेखि भ्याम् आयो, सकारको रुत्व, "हशिच"ले उत्व, गुण भयो, 'पयोभ्याम्' सिद्ध भयो । भिस्, भ्यस्मा पनि यही प्रक्रिया हुन्छ । सुप्मा अनेहस्, वेधस् शब्दमा जस्तै प्रक्रिया हुन्छ र 'पयः सु', 'पयस्सु' यी दुई रूप हुन्छन् ।

मनस् (मन), चेतस् (चित्त), रजस् (धूलो), अंहस् (पाप) शब्दका पनि पयस् शब्दका जस्तै रूप हुन्छन् ।

**सुपुंस्**- (असल मानिस भएको कुल वा नगरी ।)

सुपुम् । सुपुंसी । सुपुमांसि ॥ अदः । विभक्तिकार्यम् । उत्वमत्वे । अमू । अमूनि । शेषं पुंवत् ॥

**इति हलन्तनपुंसकलिङ्गाः**

---

**षड्लिङ्गप्रकरणम् समाप्तम् ।**

---

**सुपुम्**– सुपुंस् शब्ददेखि सु आयो, 'सुपुंस्+स्' भयो, सुको स्वमोर्नपुंसकात्ले लुक् भयो, "संयोगान्तस्य लोपः"को दृष्टिमा "नश्चापदान्तस्य"ले गरेको अनुस्वार असिद्ध हुनाले सुपुम्स् यस्तो छ र "संयोगान्तस्य लोपः"ले सकारको लोप भयो, "निमित्तापाये०" लाएर अनुस्वारको मकार भयो, 'सुपुम्' सिद्ध भयो ।

**सुपुंसी**– सुपुंस् शब्ददेखि औ आयो, औका स्थानमा शी भयो, 'सुपुंसी' सिद्ध भयो ।

**सुपुमांसि**– सुपुंस् शब्दको सर्वनामस्थान-शिको विवक्षामा असुङ् भयो, अनुस्वारको मकार भयो सुपुमस् भयो । सुपुमस् शब्ददेखि जस् आयो, शि आदेश भयो, "उगिदचां०"लाई बाधेर "नपुंसकस्य झलचः"ले नुम् भयो, "सान्तमहतः०"ले दीर्घ भयो, 'सुपुमान्+सि' भयो, नकारको "नश्चापदान्तस्य०"ले अनुस्वार भयो, 'सुपुमांसि' सिद्ध भयो ।

द्वितीया विभक्तिमा पनि यस्तै प्रकारले यस्तै रूप हुन्छन् । बाँकी टा आदि विभक्तिमा पुलिङ्गमा पुंस् शब्दमा जस्तै प्रक्रिया हुन्छ रूप पनि उस्तै हुन्छन् ।

**अदः**– अदस् शब्ददेखि सु आयो, लुक् भयो, सान्त अदस् शब्द हुनाले उत्व मत्व भएन - रुत्व, विसर्ग भयो, 'अदः' सिद्ध भयो ।

**अमू**– अदस् शब्ददेखि औ आयो, औको स्थानमा शी भयो, अत्व पररूप भयो, गुण भयो, अदे "अदसोऽसेर्दादु दो मः"ले ऊत्व, मत्व भयो, 'अमू' सिद्ध भयो ।

**अमूनि**– अदस् शब्ददेखि जस् आयो, जस्का स्थानमा शि भयो, 'अदस्+इ' अत्व पररूप 'अद+इ' भयो, "नपुंसकस्य झलचः"ले नुम् भयो, "सर्वनामस्थाने चा०"ले दीर्घ भयो, 'अदानि' ऊत्व, मत्व भयो, 'अमूनि' सिद्ध भयो । अम् औट् शस्मा यही प्रक्रिया भएर यिनै रूप हुन्छन् ।

**शेषमिति**– शेषरूप पुलिङ्गमा जस्तै यहाँ पनि हुन्छन् । प्रक्रिया पनि उस्तै हो ।

**हलन्त पुलिङ्गप्रकरण सकियो ।**

---

**षड्लिङ्गप्रकरण पनि सकियो ।**

---

यहाँ अजन्त पुंलिङ्ग, अजन्त स्त्रीलिङ्ग, अजन्त नपुंसकलिङ्ग, हलन्त पुंलिङ्ग, हलन्त स्त्रीलिङ्ग, हलन्त नपुंसक लिङ्ग यी ६ प्रकरणलाई षड्लिङ्ग प्रकरण भनिन्छ ।

## अथाव्ययानि

**३६६. स्वरादिनिपातमव्ययम् १ । १ । ३७ ॥**

स्वरादयो निपाताश्चाव्ययसंज्ञा: स्यु: । १ स्वर् । २ अन्तर् । ३ प्रातर् । ४ पुनर् । ५ सनुतर् । ६ उच्चैस् । ७ नीचैस् । ८ शनैस् । ९ ऋधक् । १० ऋते । ११ युगपत् । १२ आरात् । १३ पृथक् । १४ ह्यस् । १५ श्वस् । १६ दिवा । १७रात्रौ । १८ सायम् । १९ चिरम् । २० मनाक् । २१ ईषत् । २२ जोषम् । २३ तूष्णीम् । २४ बहिस् । २५ अवस् । २६ समया । २७ निकषा । २८ स्वयम् । २९ वृथा । ३० नक्तम् । ३१ नञ् । ३२ हेतौ । ३३ इद्धा । ३४ अद्धा । ३५ सामि । ३६ वत् । ३७ ब्राह्मणवत् । ३८ क्षत्रियवत् । ३९ सना । ४० सनत् । ४१ सनात् । ४२ उपधा । ४३ तिरस् । ४४ अन्तरा । ४५ अन्तरेण । ४६ ज्योक् । ४७ कम् । ४८ शम् । ४९ सहसा । ५० विना ।

---

**अब अव्ययप्रकरण शुरू गरिन्छ–**

**स्वरादीति–** स्वर् आदि शब्द र निपातसंज्ञक शब्द पनि अव्ययसंज्ञक होऊन् ।

**स्वरादि शब्दहरू–**

| | | |
|---|---|---|
| १. स्वर् (स्वर्ग) | २. अन्तर् (भित्र) | ३. प्रातर् (बिहान) |
| ४. पुनर् (फेरि) | ५. सनुतर् (लुक्नु) | यी पाँच शब्द रेफान्त छन् । |
| ६. उच्चैस् (ऊचो) | ७. नीचैस् (नीचो/तल) | ८. शनैस् (बिस्तारै) |
| ९. ऋधक् (साँचो) | १०. ऋते (छोडेर) | ११. युगपत् (एकैपटक) |
| १२. आरात् (नजीक/टाढा) | १३. पृथक् (अलग) | १४. ह्यस् (हिजो) |
| १५. श्वस् (भोलि) | १६. दिवा (दिन) | १७. रात्रौ (रात) |
| १८. सायम् (साँझ) | १९. चिरम् (धेरैबेर) | २०. मनाक् (थोरै) |
| २१. ईषत् (अलिअलि) | २२. जोषम् (चूपचाप) | २३. तूष्णीम् (चूपचाप) |
| २४. बहिस् (बाहिर) | २५. अवस् (बाहिर) | २६. समया (नजीक) |
| २७. निकषा (नजीक) | २८. स्वयम् (आफैं) | २९. वृथा (व्यर्थ) |
| ३०. नक्तम् (रात्रि) | ३१. नञ् (निषेधार्थ) | ३२. हेतौ (निमित्त) |
| ३३. इद्धा (स्पष्ट) | ३४. अद्धा (वास्तविक कुरा) | ३५. सामि (आधा) |
| ३६. वत् (तुल्य) | ३७. ब्राह्मणवत् (ब्राह्मणले तुल्य) | ३८. क्षत्रियवत् (क्षत्रियले तुल्य ।) |

(३६ नं. को वत् यो "तेन तुल्यम् क्रियाचेद् वतिः"ले गरेको वतिप्रत्यय हो । केवल प्रत्ययको अर्थ हुँदैन, भनेर यहाँ 'ब्राह्मणवत्', 'क्षत्रियवत्' यी दुई उदाहरण दिएको हो ।

| | | |
|---|---|---|
| ३९. सना (नित्य) | ४०. सनत् (नित्य) | ४१. सनात् (नित्य) |
| ४२. उपधा (भेदे) | ४३. तिरस् (अन्तर्धान छिप्नु) | ४४. अन्तरा (बीच, बाहेक) |
| ४५. अन्तरेण (विना) | ४६. ज्योक् (चाँडै) | ४७. कम् (सुख) |
| ४८. शम् (सुख) | ४९. सहसा (अकस्मात्) | ५०. विना (छोडेर) |

५१ नाना । ५२ स्वस्ति । ५३ स्वधा । ५४ अलम् । ५५ वषट् । ५६ श्रौषट् । ५७ वौषट् । ५८ अन्यत् । ५९ अस्ति । ६० उपांशु । ६१ क्षमा । ६२ विहायसा । ६३ दोषा । ६४ मृषा । ६५ मिथ्या । ६६ मुधा । ६७ पुरा । ६८ मिथो । ६९ मिथस् । ७० प्रायस् । ७१ मुहुस् । ७२ प्रबाहुकम् । ७३ प्रवाहिका । ७४ आर्यहलम् । ७५ अभीक्ष्णम् । ७६ साकम् । ७७ सार्धम् । ७८ नमस् । ७९ हिरुक् । ८० धिक् । ८१ अथ । ८२ अम् । ८३ आम् । ८४ प्रताम् । ८५ प्रशान् । ८६ प्रतान् । ८७ मा । ८८ माङ् । आकृतिगणोऽयम् ॥

चादयः– १ च । २ वा । ३ ह । ४ अह । ५ एव । ६ एवम् । ७ नूनम् । ८ शश्वत् ।

---

५१. नाना (धेरै) ५२. स्वस्ति (कल्याण) ५३. स्वधा (पितृहरूलाई)
५४. अलम् (पर्याप्त, निषेध, समर्थ) ५५. वषट्, ५६. श्रौषट्
५७. वौषट् (यी तीनको देवहविर्दान अर्थ) ५८. अन्यत् (अर्को)
५९. अस्ति (छ) ६०. उपांशु (अस्पष्ट उच्चारण र रहस्य)
६१. क्षमा (शान्ति) ६२. विहायसा (आकाश) ६३. दोषा (रात्रि)
६४. मृषा ६५. मिथ्या (यी दुवै शब्दको झूटो भन्ने अर्थ छ ।)
६६ मुधा (व्यर्थ) ६७. पुरा (पहिले) ६८. मिथो
६९. मिथस् (परस्पर) ७०. प्रायस् (धेरैजसो) ७१. मुहुस् (बारम्बार)
७२. प्रबाहुकम् (त्यही समयमा, तुरून्त)
७३. प्रवाहिका (त्यही समयमा तुरून्त) ७४. आर्यहलम् (जबर्जस्त)
७५. अभीक्ष्णम् (बारंबार) ७६. साकम् (सँगै) ७७. सार्धम् (सँगै)
७८. नमस् (नमस्कार) ७९. हिरुक् (छोडेर) ८० धिक् (धिक्कार)
८१. अथ (अब, मङ्गल, प्रश्न) ८२. अम् (छिटो, थोरै) ८३. आम् (स्वीकार)
८४. प्रताम् (ग्लानि) ८५. प्रशान् (बारम्बार)
८६. मा (निषेध) ८७. माङ् (निषेध)

यो आकृति गण हो । अतः अरू शब्द पनि जान्नू ।

{१. कामम् (यथेच्छ) २. प्रकामम् (धेरै) ३. भूयस् (बारम्बार)
४. साम्प्रतम् (अहिले, ठीक छ) ५. साक्षात् (प्रत्यक्ष) ६. परम् (तर)
७. साचि (तेर्छो) ८. मङ्क्षु ९.आशु (चाँडै)
१०. संवत् (वर्ष, साल) ११. अवश्यम् (निश्चय) १२. उषा (रात्रि)
१३. भूर् (पृथिवी) १४. सुष्ठु (असल) १५. दुष्ठु (खराब)
१६. सु (प्रशंसा) १७. कु (निन्दा) १८. वरम् (केही असल)
१९. स्थाने (ठीक छ) २०. ओम् (अँ, स्वीकारोक्ति) २१. अञ्जसा (ठीक छ)
२२. सुदि (शुक्ल पक्ष) २३. वदि (कृष्णपक्ष) २४. झटिति (चाँडै)
२५. तरसा (चाँडै)}

**चादिगणका शब्दको परिगणन–**

१. च (समुच्चय, अन्वाचय, इतरेतरयोग, समाहार) २. वा (विकल्प उपमा)
३. ह (प्रसिद्धि) ४. अह (प्रशंसा, आश्चर्य !) ५ एव (नै, अवधारण)
६ एवम् (यस्तै) ७. नूनम् (निश्चय) ८ शश्वत् (बारम्बार)

९ युगपत् । १० भूयस् । ११ कूपत् । १२ कुवित् । १३ नेत् । १४ चेत् । १५ चण् । १६ कच्चित् । १७ यत्र । १८ नह । १९ हन्त । २० माकिः । २१ माकिम् । २२ नकिः । २३ नकिम् । २४ माङ् । २५ नञ् । २६ यावत् । २७ तावत् । २८ त्वै । २९ द्वै । ३० न्वै । ३१रै । ३२ श्रौषट् । ३३ वौषट् । ३४ स्वाहा । ३५ स्वधा । ३६ वषट् । ३७ तुम् । ३८ तथाहि । ३९ खलु । ४० किल । ४१ अथो । ४२ अथ । ४३ सुष्ठु । ४४ स्म । ४५ आदह । ग.सू. (उपसर्गविभक्तिस्वरप्रतिरूपकाश्च) । ४६ अवदत्तम् । ४७ अहंयुः । ४८ अस्तिक्षीरा । ४९ अ । ५० आ । ५१ इ । ५२ ई । ५३ उ । ५४ ऊ । ५५ ए । ५६ ऐ । ५७ ओ । ५८ औ । ५९ पशु । ६० शुकम् । ६१ यथाकथाच ।

---

९ युगपत् (एकैपटक) १०. भूयस् (फेरि) ११ कूपत् (प्रश्न र प्रशंसा)
१२. कुविद् (धेरै प्रशंसा) १३. नेत् (शङ्का)
१४. चेत्, १५. चण् (यसो हो भने, यदिको अर्थ) १६. कच्चित् (अभीष्ट प्रश्न)
१७. यत्र (रिस निन्दा (यत्रो हो) १८ नह (निषेध गरेर प्रत्यारम्भ गर्नु)
१९ हन्त (हर्ष, वाक्यारम्भ, विषाद) २०. माकिः, २१ माकिम्,
२२. नकिः, २३. नकिम्, २४. माङ्,
२५. नञ् (निषेधार्थक) २६. यावत् (जति) २७. तावत् (त्यति)
यी दुवै शब्द साकल्य, अवधि, मान, अवधारणा अर्थमा छन् । **साकल्यमा-** 'यावत्कार्य, तावत् कृतम्' यस्तो हुन्छ । **अवधि अर्थमा**-'यावद्गन्तव्यम् तावत्तिष्ठ' यस्तो हुन्छ । मान अर्थमा 'यावद्दत्तं, तावद्भुक्तम्' यस्तो हुन्छ । **अवधारणामा-** 'यावदमत्रं, तावद्ब्राह्मणानामन्त्रयस्व' यस्तो हुन्छ ।
२८.-३०. त्वै, द्वै, न्वै (वितर्क) ३१ रै (दानं, अनादर), ३२. श्रौषट्
३३. वौषट् (हविदिनु, अङ्गरक्षा गर्नु) ३४. स्वाहा (देवतालाई हविद्दिने मन्त्र)
३५. स्वधा (पितृलाई हवि दिने मन्त्र ।) ३६. वषट् (देवतालाई हवि दिनु, अङ्गरक्षा गर्नु)

श्रोषट्, वौषट्, वषट्, स्वाहा, स्वधा, यिनीहरूको स्वरादिमा र चादिमा उभयत्र पाठ स्वर भेदको निमित्त छ ।

३७. तुम् (तँ तँ र मम गर्नु/त्वंकार)

"गुरु तुंकृत्य हुंकृत्य विप्रं निर्जित्य वादतः । अरण्ये निर्जले देशे जायते ब्रह्मराक्षसः" इति गारुडे ।

३८. तथाहि (निदर्शन, दृष्टान्त) ३९. खलु (निषेध, निश्चय) ४०. किल (झूटो, प्रसिद्धि)
४१.-४२. अथो, अथ (आरम्भ, मङ्गल आदि) ४३. सुष्ठु (राम्रो) स्वरभेदका निमित्र यस गणमा पनि पढियो ।
४४. स्म (पादपूरण, बितेको कुरा) ४५. आदह (आरम्भ, निन्दा)

(ग.सू.) उपसर्गेति- चादिहरू उपसर्ग प्रतिरूपक, विभक्त्यन्त प्रतिरूपक, स्वर प्रतिरूपक पनि छन् । जस्तैः

४६. अवदत्तम् (दिइएको) यहाँ अव यो उपसर्ग प्रतिरूपक अव्यय हो ।
४७. अहंयुः (अहङ्कारी) यहाँ अहंशब्द सुब्विभक्त्यन्त प्रतिरूपक अव्यय हो ।
४८. अस्तिक्षीरा गौः (दूध दिने गाई) अस्तिक्षीरा यहाँ अस्तिशब्द तिङ्विभक्त्यन्त प्रतिरूपक अव्यय हो ।
४९. अ (निषेध, सम्वोधन) ५०. आ (पूर्वोपक्रान्तवाक्यार्थानभिमतत्व र स्मरण)
५१.-५८. इ, ई, उ, ऊ, ए, ऐ, ओ, औ (प्रत्येक सम्वोधनार्थक छन्)
५९. पशु (पादपूरण, ठीक) ६०. शुकम् (चाँडो) ६१. यथाकथा च (अनादर, जसरी तसरी)

६२ पाट् । ६३ प्याट् । ६४ अङ्ग । ६५ है । ६६ हे । ६७ भोः । ६८ अये । ६९ द्य । ७० विषु । ७१ एकपदे । ७२ युत् । ७३ आतः । चादिरप्याकृतिगणः ॥

**३६७. तद्धितश्चासर्वविभक्तिः १ । १ । ३८ ।**

यस्मात्सर्वा विभक्तिर्नोत्पद्यते, स तद्धितान्तोऽव्ययं स्यात् । परिगणनं कर्तव्यम् । तसिलादयः प्राक् पाशपः । शस्प्रभृतयः प्राक् समासान्तेभ्यः । अम् । आम् । कृत्वोर्थाः ।

---

६२.-६८. पाट्, प्याट्, अङ्ग, है, हे, भोस्, अये (सबै संबोधनार्थक) ६९. द्य (हिंसा)
७०. विषु (विविध) ७१. एकपदे (तुरन्त, तत्काल) ७२. युत् (निन्दा, धुत् भनेर हप्काउनु)
७३. आतः (यस कारण पनि)

यो चादि पनि आकृतिगण छ । अतः यहाँ परिगणित शब्द बाहेक अरू पनि चादिभित्र पर्दछन्, जो प्रयोगमा आइरहेका छन् । तिनीहरू तल दिइन्छ ।

{१. यत्तद् (हेतु) २.-३. आहो, उताहो (अथवा)
४. आहोस्वित् (यसो हो कि) ५.-६. किमुत, किमूत (के भन्नु)
७. अथवा (विकल्प) ८. दिष्ट्या (आनन्दको कुरा)
९.-१०. चटु, चाटु (यी दुवै अव्यय प्रेमले झुठो कुरा गर्नु अर्थात् चाप्लुसी गर्नु अर्थमा छन्)
११. हुम् (हप्काउनु, निन्दा गर्नु) १२.-१३. इव, व (तुल्य/सादृश्य)
१४. अह्नाय (छिटो) १५. सकृत् (एकपटक) १६. असकृत् (बारम्बार)
१७. प्रेत्य (परलोक) १८. अमुत्र (यसलोक)
१९.-२०. जातु, कदाचित् (यी दुवै कहिलेकाहीँ भन्ने अर्थमा छन्)
२१. अद्यत्वे (यस समयमा) २२. भृशम् (अत्यन्त)}

**तद्धितश्चेति**– जसदेखि सबै विभक्ति आउँदैनन्, त्यो तद्धितान्त शब्द अव्ययसंज्ञक होस् ।

**परिगणनमिति**-यस्तै सबै विभक्ति नआउने कुन कुन शब्द छन् गिन्ती गर्न योग्यछ–

[६५]**तसिलादय इति**–'तसिल्'आदि गरिएका पाशप् प्रत्ययदेखि पूर्वका प्रत्यय अर्थात् "पञ्चम्यास्तसिल्" ५।३।७ देखि "याप्ये पाशप्" ५।३।४७ देखि अगाडि "एधाच्च" ५।३।४६ यो सूत्र सम्मका प्रत्यय ।

[६६]**शस्प्रभृतय इति**– "बह्वल्पार्थाच्छस्०" ५।४।४२ देखि लिएर "समासान्ताः" ५।४।६८ सूत्र देखि अघिल्लो "मद्रात्परिवापणे" ५।४।६७ सम्मका प्रत्यय,

[६७]**अम्, आम्**– "किमेत्तिङव्यय०" ५।४।११ ले गरेको आम्प्रत्यय, "अमु चच्छन्दसि ५।४।१२ ले गरेको अम्प्रत्यय,

[६८]**कृत्वोऽर्था इति**– "संख्यायाः क्रियाभ्यावृत्तिगणने०" ५।४।१७ ले गरेको कृत्वसुच्प्रत्यय, "द्वित्रिचतुर्भ्यः सुच्" ५।४।१८ ले गरेको सुच् प्रत्यय, "एकस्य सकृच्च" ५।४। १९ ले गरेको सुच् प्रत्यय,

---

६५ कुतः, इतः, ततः, अतः, कुत्र, यत्र, तत्र, इह, सदा, कदा, इदानीम्, तदानीम्, अधुना, तर्हि, कर्हि, इत्थम्, पुरस्तात्, पुरः, तथा उत्तरात्, दक्षिणात् एकधा, द्विधा, पञ्चधा, दशधा शतधा इत्यादि शब्द ।

६६ बहुशः, अल्पशः, द्विशः, आदितः, मध्यतः, स्वरतः, अग्निसात्, भस्मसात्, राजसात्, विप्रत्रा, देवत्रा, सुखाकरोति, सत्याकरोति, मद्राकरोति इत्यादि शब्द ।

६७ प्रतरम् (वैदिक प्रयोग) पचतितमाम्, किन्तमाम्, प्राह्णेतमाम् इत्यादि शब्द ।

६८ पञ्चकृत्वः, द्विः, त्रिः, सकृत्, चतुः, इत्यादि शब्द ।

तसिवती । नानाञौ । एतदन्तमप्यव्ययम् ॥

**३६८. कृन्मेजन्तः १ । १ । ३९ ॥**

कृद्यो मान्त एजन्तश्च तदन्तमव्ययं स्यात् । स्मारं स्मारम् । जीवसे । पिबध्यै ॥

**३६९. क्त्वातोसुन्कसुनः १ । १ । ४० ॥**

एतदन्तमव्ययम् । कृत्वा । उदेतोः । विसृपः ॥

**३७०. अव्ययीभावश्च १ । १ । ४१ ॥**

अधिहरि ॥

---

[६९] **तसिवती**– "तसिश्च" ४।३।११३ ले गरेको तसिप्रत्यय, "तेन तुल्यं क्रिया०" ५।१।११५ले गरेको वतिप्रत्यय, "तत्र तस्येव" ५।१।११६ ले गरेको वतिप्रत्यय,

[७०] **नानाञौ**– विनञ्भ्यां नानाञौ नसह ५।२।२७ ले गरेको ना र नाञ्प्रत्यय,

**एतदन्तमिति**– यति प्रत्यय अन्तमा हुने शब्द पनि अव्ययसंज्ञक हुन्छन् ।

**कृन्मे इति**– जो मकार अन्तमा हुने र एच् अन्तमा हुने कृत्प्रत्यय छ, तदन्त शब्द पनि अव्ययसंज्ञक होस् ।

**स्मारम् स्मारम्**- यो "आभीक्ष्णे णमुल् च" ३।४।२२ ले गरेको णमुल् प्रत्यय अन्तमा हुने शब्द हो । णमुल्को अम् बाँकी रहन्छ अतः मकारान्त कृत् प्रत्यय अन्तमा हुने शब्द हुनाले यसलाई "कृन्मेजन्तः"ले अव्यय संज्ञा हुन्छ । यस्तै अरू मकारान्त कृत् प्रत्यय अन्तमा हुने भोक्तुम् पातुम् आदि शब्दलाई पनि उक्त सूत्रले अव्ययसंज्ञा हुन्छ ।

**जीवसे**– यो "तुमर्थे सेसेन०"ले गरेको से प्रत्यय अन्तमा हुने शब्द हो । एजन्त कृत् प्रत्यय अन्तमा हुने हुनाले यसलाई "कृन्मेजन्तः"ले नै अव्ययसंज्ञा हुन्छ ।

**पिबध्यै**– यो पनि "तुमर्थे सेसे०"ले नै गरेको शध्यै प्रत्यय अन्तमा हुने शब्द हो । एच् अन्तमा हुने कृत् प्रत्ययान्त शब्द हुनाले यसलाई पनि "कृन्मेजन्तः"ले नै अव्ययसंज्ञा हुन्छ ।

**क्त्वेति**– क्त्वा प्रत्यय तोसुन् प्रत्यय र कसुन् प्रत्यय अन्तमा हुने शब्द अव्ययसंज्ञक होऊन् ।

**कृत्वा**– यो "समानकर्तृकयोः पूर्वकाले"ले गरेको क्त्वाप्रत्यय अन्तमा हुने शब्द हो । यसलाई "क्त्वातोसुन्कसुनः"ले अव्ययसंज्ञा हुन्छ । 'अलं भुक्त्वा' यहाँ "अलंखल्वोः०"ले क्त्वाप्रत्यय गर्दछ । भुक्त्वा यसलाई पनि प्रकृत सूत्रले नै अव्ययसंज्ञा हुन्छ ।

**उदेतोःविसृपः**- "ईश्वरे तोसुन्कसुनौ"ले तोसुन् र कसुन् प्रत्यय भएर बनेका शब्द हुन् ।

यी शब्दलाई "क्त्वातोसुन्कसुनः"ले अव्ययसंज्ञा हुन्छ । अव्ययसंज्ञक शब्ददेखि विधान गरिएका स्वादि प्रत्ययको आगामी सूत्रले लुक् हुन्छ । अव्यय शब्दको सबै विभक्ति र वचनमा एउटै रूप हुन्छ ।

**अव्ययीभावश्चेति**- अव्ययीभावसमास पनि अव्ययसंज्ञक होस् ।

**अधिहरि**– हरौ इति यस विग्रहमा "अव्ययं विभक्ति०"ले अव्ययीभाव समास भएर अधिहरि शब्द बनेको हो । यसलाई "अव्ययीभावश्च"ले अव्ययसंज्ञा हुन्छ ।

**अव्ययादिति**– अव्ययदेखि विधान गरिएका आप्को र सुप्को लुक् होस् ।

---

६९ पीलूमूलतः, (पीलुमूलेन एकदिक् इति विग्रहः) उरस्तः, इत्यादि शब्द । ब्राह्मणवत्, क्षत्रियवत्, चैत्रवत्, मैत्रवत्, आदि शब्द ।

७० विना, नाना, यी दुई शब्द । यहाँ कुतः आदि, मैत्रवत्, समका शब्द दिग्दर्शनका निमित्त मात्र लेखिएको हो । कुन सूत्रबाट के के प्रत्यय हुन्छन् कति शब्द बन्दछन्, त्यहीं अध्ययन गरेर ऊह गर्नुपर्दछ ।

**३७१. अव्ययादाप्सुपः २ । ४ । ८२ ॥**

अव्ययाद्विहितस्यापः सुपश्च लुक् । तत्र शालायाम् ॥
सदृशं त्रिषु लिङ्गेषु सर्वासु च विभक्तिषु ।
वचनेषु च सर्वेषु यन्न व्येति तदव्ययम् ॥१॥
वष्टि भागुरिरल्लोपमवाप्योरुपसर्गयोः ।
आपं चैब हलन्तानां यथा वाचा निशा दिशा ॥२॥
वगाहः, अवगाहः । पिधानम्, अपिधानम् ॥

**इत्यव्ययानि ।**

---------------------

**सुबन्तप्रकरणं समाप्तम् ।**

---

**तत्रेति**– तत्र शालायाम् यहाँ तत्र यो "सप्तम्यास्त्रल्"ले तद् शब्ददेखि त्रल् प्रत्यय भएर बनेको रूप हो । त्रल्प्रत्यय तसिलादि एधात् सम्मका प्रत्ययको अर्न्तगत प्रत्यय हो र यसलाई "तद्धितश्चासर्वविभक्तिः"ले अव्ययसंज्ञा भयो । तत्र यो शाला शब्दको विशेषण हुनाले स्त्रीत्वात् टाप् भयो, "अव्ययादाप्सुपः"ले टाप्को लुक् भयो र 'तत्र शालायाम्' सिद्ध भयो ।

**अव्ययको लक्षणः–**

**सदृशमिति**– तीनै लिङ्गमा समान रूप हुने सबै विभक्तिमा र वचनमा पनि जो व्ययभाव (विकार) प्राप्त हुँदैन । त्यो अव्यय हो । यो भनाइको तात्पर्य अव्यय यो अन्वर्थसंज्ञा हो किनभने अव्ययदेखि आएको स्त्रीलिङ्गबोधक टाप् प्रत्यय र विकृति ल्याउने सुप् प्रत्ययको "अव्ययादाप्सुपः"ले लुक् हुन्छ । अतः लिङ्ग, विभक्ति र वचनबाट हुने विकार अव्यय शब्दमा हुँदैनन् । अव्ययको प्रसङ्गमा वृत्तिकार भागुरिको मत उल्लेख गर्दछन्–

**वष्टीति**– भागुरिनामक वैयाकरण आचार्यले अव, अपि, उपसर्गको अकारको लोप चाहन्छन् भने अव्यय भिन्न हलन्त स्त्रीलिङ्ग शब्ददेखि टाप् प्रत्यय गर्दछन् । जस्तो कि वाच् शब्ददेखि टाप् गरेर 'वाचा' निश् शब्ददेखि टाप् गरेर 'निशा' दिश् शब्ददेखि टाप् गरेर 'दिशा' यी शब्द बनाउँदछन् । टाप्को उदाहरण त कारिका मै दिइयो । अव र अपिको अकारको लोप भएको उदाहरण– 'अवगाहः' यहाँ 'वगाहः' यस्तो र अपिधानम् यहाँ 'पिधानम्' यस्तो प्रयोग भागुरि मान्दछन् ।

अवगाहः, वगाहः (डुब्नु) अपिधानम्, पिधानम् (ढकनी, ढाक्नु)

**अव्यय प्रकरण सकियो,**

---------------------

**सुबन्त प्रकरण साङ्गोपाङ्ग समाप्त भयो ।**

---------------------

## अथ तिङन्तप्रकरणम्

### तत्र भ्वादिगणप्रकरणम्

लट् लिट् लुट् लृट् लेट् लोट् लङ् लिङ् लुङ् लृङ्। एषु पञ्चमो लकारश्छन्दोमात्रगोचरः ॥

सुवृत्ततिलकं नौमि लीलालक्षितविग्रहम्।
रविमण्डलमध्यस्थं रामं नारायणं हरिम् ॥

**अब तिङन्त प्रकरण आरम्भ गरिन्छ**
**त्यसमध्ये पहिलो भ्वादिगण**

**लडिति-** लट्। लिट्। लुट्। लृट्। लेट्। लोट्। लङ्। लिङ्। लुङ्। लृङ्। यी दश लकारमा पाँचौं लेट् लकार वेदको मात्र विषय छ। अर्थात् लेट् लकार वेदमा मात्र प्रयुक्त हुन्छ। लोकमा लेट् लकारको प्रयोग हुँदैन। यी लकार धातुका अगाडि प्रयुक्त हुन्छन्। यिनै लकारद्वारा धातुवाच्य क्रियाको काल आदिको ज्ञान हुन्छ।

**लकारहरूको काल र अर्थ**

१. लट्- वर्तमानकालमा लट् लकार हुन्छ।
२. लिट्- परोक्ष अनद्यतन भूत कालमा लिट् लकार हुन्छ।
३. लुट्- अनद्यतन भविष्यत् कालमा लुट् लकार हुन्छ।
४. लृट्- सामान्य भविष्यत् काल्मा लृट् लकार हुन्छ।
५. लेट्- लिङ्को अर्थमा र शर्त, आशङ्का, अर्थमा लेट् लकार हुन्छ।
६. लोट्- विधि आदि अर्थमा लोट् लकार हुन्छ।
७. लङ्- अनद्यतन भूत कालमा लङ् लकार हुन्छ।
८. लिङ्- (क) विध्यादि अर्थ र (ख) आशीर्वाद आदि अर्थमा लिङ् लकार हुन्छ।
९. लुङ्- सामान्य भूतमा लुङ् लकार हुन्छ।
१०. लृङ्- हेतुहेतुमद्भाव आदि लिङ्को अर्थमा लृङ् लकार हुन्छ। क्रियाको अनिष्पत्ति गम्यमान भएमा मात्र।

लकारहरूको अर्थ बुझ्न तल लेखिएका कालहरूको परिभाषा जान्नु आवश्यक छ। काल भनेको समय हो। जुन समयमा जुन क्रिया भएको छ, हुँदैछ या हुनेवाला छ। त्यस क्रियाको त्यही काल मान्नु पर्छ। काल तीन प्रकारको हुन्छ- भूत, वर्तमान, भविष्यत्।

**वर्तमानकाल–** "प्रारब्धापरिसमाप्तिक्रियाश्रयत्वं वर्तमानत्वम्" क्रियाको आरम्भदेखि समाप्ति नहुञ्ज्यालसम्म काममा लागिरहनुलाई वर्तमानकाल भनिन्छ। जस्तै 'स उत्तरमध्यमकक्षायां पठति' (ऊ उत्तरमध्यम कक्षामा पढ्छ) यो वाक्यमा 'पठति' क्रियापद उत्तरमध्यमा कक्षामा पढ्न शुरू गरेदेखि उत्तरमध्यमा कक्षाबाट उत्तीर्ण नहुञ्ज्याल् प्रयोग गरिन्छ। अतः 'पठति' यो वर्तमानकालिक क्रियापद हो।

**भविष्यत्काल–** भविष्यत्काल भनेको त्यो हो, जहाँ कामको शुरूआत भएकै छैन र पछि शुरू हुनेछ। त्यस्तो क्रियालाई भविष्यत्कालिक क्रिया भनिन्छ। 'स पठिष्यति' ऊ पढ्नेछ। यहाँ पढ्ने काम

शुरू भएको छैन र पछि शुरू हुनेछ भन्ने बुझिन्छ। 'पठिष्यति' यो भविष्यत्कालिक क्रियापद हो।

**भूतकाल**– भूत काल भनेको त्यो हो जहाँ काम पूरा भैसकेको छ। अर्थात् काम शुरू गरेर पूरा गरिसकिएको छ। जस्तै 'सः अपठत्' उसले पढ्यो, यस वाक्यमा पढनु क्रियाको समाप्ति भएको बुझिन्छ, यसैले यो भूत कालको प्रयोग हो।

**अद्यतन र अनद्यतनः**– "व्यतीतायाः रात्रेः पश्चार्द्धेन आगामिन्याश्च पूर्वार्द्धेन सहितः सकलो दिवसोऽद्यतनस्तदभिन्नोऽनद्यतनः," । अद्यतन काल (आज) बितेको रातको १२ बजेदेखि यता आगामी रातको १२ बजेसम्मको समयलाई अद्यतन भनिन्छ। यही समयमा क्रिया भएको छ भने अद्यतन कालको क्रिया भनिन्छ। त्यसदेखि भिन्न समयलाई अनद्यतन भनिन्छ। अनद्यतन दुई प्रकारको हुन्छ।

(१) **भूतानद्यतन**– बितेको रातको १२ बजे भन्दा अगाडिको समय भूतानद्यतन अथवा अनद्यतन भूत भनिन्छ।

(२) **भविष्यदनद्यतन**- आगामी रातको १२ बजे पछिलाई भविष्यदनद्यतन वा अनद्यतन-भविष्यत् भनिन्छ।

**परोक्षभूत र अपरोक्ष भूत**– आफैंले देखेको, सुनेको, अनुभव गरेको कुरालाई प्रत्यक्ष भनिन्छ। अरूले देखेको अरूले सुनेको र अनुभव गरेको कुरालाई परोक्ष भनिन्छ। जस्तै 'त्रेतायां रामो राजा बभूव', 'त्रेतायुगमा राम राजा भएका थिए'। यस वाक्यमा 'बभूव' यो परोक्ष क्रियापद हो। किनकि त्रेतायुगका रामलाई कलियुगका मान्छेले देखेको छैन। पुराणकर्ताको उक्तिबाट ज्ञान भएको कुरा हो। त्यस्तै 'रामो रावणं जघान' देवदत्तो वाराणसीं जगाम, यहाँ रावणलाई रामले मारेको र देवदत्त वनारस गएको प्रयोगकर्ताले देखेको छैन भन्ने बुझिन्छ।

काल विभाजनमा परोक्षवर्तमान मानिएको छैन । भविष्यत् सदा परोक्ष हुन्छ। त्यसैले परोक्ष भविष्यत् पनि मानिएको छैन। परोक्ष अपरोक्ष दुवैको भूतकालसँग सम्बन्ध हुने हुनाले भूतकाल परोक्ष र अपरोक्ष मानिएको छ। उत्तमपुरूषको प्रयोगमा पनि आफूले होश नपाइकन गरेको काम परोक्ष हुन्छ। जस्तैः'अहं निद्रायां विललाप' म निदाएको बेलामा बर्बराएँछु भन्दा यहाँ परोक्षभूत हुन्छ। भूतकाल र भविष्यत्काललाई अद्यतन र अनद्यतन गरेर दुई भागमा बाँडिएको छ।

वर्तमान कालमा लट् लकारको प्रयोग हुन्छ।
भविष्यत् कालमा लृट् र लुट्को प्रयोग हुन्छ।
भूत कालमा लुङ्, लङ् र लिट्को प्रयोग हुन्छ।

| काल | | लकार- | उदाहरण- |
|---|---|---|---|
| (१) वर्तमान | | लट् | स पठति। |
| (२) भविष्यत् | (क) सामान्य | लृट् | स पठिष्यति। |
| | (ख) अनद्यतन | लुट् | स श्वः पठिता। |
| (३) भूत | (क) सामान्य | लुङ् | सोऽपठीत्। |
| | (ख) अनद्यतन | लङ् | सोऽपठत्। |
| | (ग) परोक्षअनद्यतन | लिट् | स पपाठ। |

यदि वाक्यमा अनद्यतनकालबोधक पद छ भने त्यहाँ अनद्यतनकालिक क्रियापद नै प्रयोग गर्नुपर्दछ। नत्र वाक्य अशुद्ध हुन्छ। जस्तै 'श्वो गन्ता' यस वाक्यमा श्वस् शब्द भोलिको वाचक हो। भोलि भन्दासाथ अद्यतनकाल हैन, अनद्यतनकाल हो भन्ने स्पष्ट भयो र यहाँ अनद्यतन भविष्यत् कालिक लुट् लकारको प्रयोग गर्नु पर्‍यो। यहाँ लृट्को प्रयोग अशुद्ध हुन्छ। जहाँ

अनद्यतनकाल बुझाउने कुनै पद छैन भने, त्यहाँ सामान्य भविष्यत् मानिन्छ र लृट्को प्रयोग हुन सक्छ । जस्तै 'स गमिष्यति', 'स पठिष्यति' इत्यादि वाक्यमा लृट्को प्रयोग देखेर जानिन्छ । क्रिया भविष्यत् कालको हो । अद्यतन (आजको) हो कि अनद्यतन (भोलिको) हो यसको अपेक्षा यहाँ छैन । यस्तै प्रकारले कहीं लकारको अर्थ भेद हुन्छ । जस्तै 'सोऽपठत्' यो लङ्को प्रयोगले अनद्यतन भूतकाल बुझिन्छ भने 'सोऽपठीत्' यो 'लुङ्'लकारको प्रयोग सामान्यभूत बुझिन्छ । यो सामान्य भूत र सामान्य भविष्यत्को प्रयोग अद्यतन-अनद्यतनको अपेक्षा नगरिकन भएको गरेको पाइन्छ । लट्, लृट्, लुट्, लिट्, लङ्, लुङ् बाहेक अरू लकारले क्रियाको प्रकार बताउँछन् ।

यसरी लौकिक प्रचलन र शिष्टहरूले गरेको प्रयोग अनुसार कालको विभाजन यहाँ गरियो । माधवीय धातु वृत्तिकारले भने– सूत्र अनुसार पाणिनिमुनिको अभिप्रायलाई स्पष्ट गर्ने क्रममा निम्न लिखित पद्य अनुसार काल विभाजन गरेका छन् -

**"भूतः पञ्चविधस्तत्र भविष्यँश्च चतुर्विधः ।**
**वर्तमानो द्विधा ख्यात इत्येकादशकल्पना ॥"**

**भूतकाल–** अद्यतन भूत, अनद्यतनभूत, व्यामिश्रभूत, गौणभूत र सामान्यभूत गरेर पाँच प्रकारको,

**भविष्यत्काल–** अद्यतनभविष्यत्, अनद्यतनभविष्यत्, व्यामिश्रभविष्यत् र सामान्य भविष्यत् गरी चार प्रकारको,

**वर्तमानकाल–** सामान्य वर्तमान र गौण वर्तमान गरी दुई प्रकारको हुन्छ भनेर जम्मा एघार प्रकारको काल मानेका छन् ।

परोक्ष अनद्यतन भूतकाललाई अद्यतन भूत र अनद्यतन भूत भित्र अन्तर्भाव गरेका छन् । ("परोक्षे लिट्"मा उल्लिखित परोक्ष अनद्यतन भूतकाल छुट्टै मान्ने हो भने भूतकाल छ प्रकारको हुन्छ र जम्मा काल बाह्र प्रकारका हुन्छन् ।)

**भूतकाल–** उपर्युक्त छ प्रकारका भूतकालमध्ये अद्यतन भूतकालमा लुङ्, सामान्य भूतकालमा पनि लुङ्, अनद्यतन भूतकालमा लङ्, परोक्षानद्यतन भूतकालमा लिट् हुन्छ भन्ने कुरामाथि गरिसकिएको छ र उदाहरण पनि दिइएको छ । व्यामिश्र भूत भनेको अद्यतन भूतकाल र अनद्यतन भूतकालको मिश्रण भएको भूतकाल हो, त्यसको उदाहरण– 'ह्योऽद्यवाऽगमत्', (हिजो अथवा आज गयो) यो वाक्य हो यहाँ पनि लुङ् लकार नै हुन्छ भन्ने कुरा 'अगमत्' यो प्रयोगबाट देखाइयो । गौण भूत भनेको "आशंसायां भूतवच्च"ले अतिदेश गरिएको भूतकाल हो । यसको उदाहरण 'देवश्चेदवर्षीत् धान्यमवाप्स्म' (पानी परेको भए धान रोप्ने थियौं) यो गौण भूतमा पनि लुङ् लकार नै हुन्छ ।

**भविष्यत्काल–** माथि उल्लिखित चार प्रकारको भविष्यत् कालमध्ये अद्यतनभविष्यत् र सामान्यभविष्यत्मा लृट् हुन्छ । अनद्यतनभविष्यत्मा लुट् हुन्छ भन्ने कुरा बताइसकिएको छ र उदाहरण पनि दिइएको छ । व्यामिश्र भविष्यत् भनेको अद्यतन भविष्यत् र अनद्यतन भविष्यत्को मिश्रण भएको काल हो । त्यसको उदाहरण- 'अद्य श्वो वा गमिष्यति' (आज वा भोलि जानेछ) हो । यहाँ अद्यतन र अनद्यतनको व्यामिश्रण 'अद्य' र 'श्वः' यी दुई शब्दले गरेका हुनाले यो व्यामिश्रभविष्यत्काल भयो । यसमा पनि लृट् लकार नै हुन्छ भन्ने कुरा 'गमिष्यति'यो क्रियापदबाट बुझियो ।

**वर्तमानकाल–** माथि बताइएका सामान्यवर्तमान र गौण वर्तमान यी दुईमध्ये सामान्यवर्तमानमा लट् लकार हुन्छ भन्ने कुरा पनि सोदाहरण माथि बताइसकिएको छ ।

गौणवर्तमानकाल भनेको त्यो हो, "वर्तमानसामीप्ये वर्तमानवद् वा" भन्ने सूत्रले वर्तमानकालको सामीप्य भएमा भूत र भविष्यमा पनि वर्तमानवत् प्रत्यय होउन् भन्ने अतिदेश गरिएको अतिदिष्ट वर्तमानकाल । जस्तै-'कदा आगतोऽसि' (कहिले आइस्) यस प्रश्नको उत्तरमा

**३७२. लः कर्मणि च भावे चाकर्मकेभ्यः ३ । ४ । ६९ ॥**

लकाराः सकर्मकेभ्यः कर्मणि कर्तरि च स्युरकर्मकेभ्यो भावे कर्तरि च ॥

---

'एष आगच्छामि' (यी आउँदैछु) भन्नु र 'कदा गमिष्यसि', (कैले जाने होस्) यस प्रश्नको उत्तरमा 'एष गच्छामि', (यी जाँदैछु) भन्नु गौण वर्तमानका उदाहरण हुन् । यहाँ पनि लट् लकार हुन्छ ।

**लः कर्मणीति**– लकारहरू सकर्मकधातुदेखि कर्म र कर्ता अर्थमा होऊन् अकमर्कधातुदेखि भाव र कर्ता अर्थमा होऊन् । यो सूत्रको अर्थ स्पष्ट गर्न फल, व्यापार, सकर्मकधातु, अकर्मकधातु, कर्म, कर्ता, भाव आदिको परिभाषा दिइन्छ । प्रत्येक धातुका दुई अर्थ हुन्छन् फल र व्यापार, सकर्मकधातुमा फलको आश्रय कर्म र व्यापारको आश्रय कर्ता हुन्छ ।

**फल**– जुन उद्देश्यको निमित्त त्यो क्रिया गरिन्छ त्यो फल हो ।

जस्तै पच्धातुको पकाउने क्रियामा भात पकाउँदा कडा चामललाई (विक्लित्ति) गिलो बनाउने उद्देश्य लिएर पकाइएको हुन्छ । सो विक्लित्ति कर्म- गिलो हुनु रूप फल ओदन अथवा चामलमा रहन्छ । अतः विक्लित्तिरूप फलको आश्रय भात अथवा चामल कर्म हो ।

**व्यापार**– जस्तै पच्धातुको फलसिद्धि (विक्लित्ति)का निमित्त कसौंडीलाई चूल्हामा चढाउने, चलाउने, ढकनीले ढाक्ने, उतार्ने आदि काम पच् धातुको व्यापार हो ।

**कर्ता**– धातुवाच्य व्यापारको आश्रय र त्यो व्यापारमा जो स्वतन्त्र छ त्यसलाई कर्ता भनिन्छ । त्यो कामको आश्रय देवदत्त आदि कोही व्यक्ति विशेष हुन्छ । अतः व्यापारको आश्रय भएको देवदत्त आदि कर्ता भयो ।

**सकर्मकधातु**- यसरी जुन जुन धातुमा फल र व्यापारको आश्रय अलग-अलग देखिन्छ ती धातु सकर्मक हुन् । यसरी विचार गर्दा पच् धातुमा पकाउनेवाला कर्ता र पाक्ने वस्तु कर्म भयो । अतः पच् धातु सकर्मक भयो ।

**अकर्मकधातु**- अकर्मकधातु त्यसलाई भन्दछन् जसको फल र व्यापार एउटैमा (कर्तामा नै) आश्रित रहन्छ । जस्तो 'शीङ् स्वप्ने' धातु यसको फल आराम आनन्द हो, त्यो फल र लम्पसार परेर सुत्नु आँखा बन्द गर्नु आदि व्यापार दुवै सुत्नेवाला कर्तामा नै रहन्छन् । अतः सुत्नु क्रियावाचक 'शीङ् धातु' अकर्मक भयो । रहने अथवा रहिने काम र वस्तु दुवै देवदत्त हुनाले भूधातु पनि अकर्मक हो । 'वैयाकरणभूषणसार'मा सकर्मक र अकर्मक धातुको बारेमा विश्लेषण गर्ने यो निम्नलिखित श्लोक छ ।

**फलव्यापारयोरेकनिष्ठतायामकर्मकः ।**
**धातुस्तयोर्धर्मिभेदे सकर्मक उदाहृतः ॥**

**यसैको भावार्थ**- "फलव्यधिकरणव्यापारवाचकत्वं सकर्मकत्वम्", "फलसमानाधिकारण व्यापारवाचकत्वमकर्मकत्वम्" हो । अकर्मक धातुहरुको वर्गीकरण गरेको एक श्लोक पनि छ ।

**लज्जासत्तास्थितिजागरणं वृद्धिक्षयभयजीवितमरणम् ।**
**शयनक्रीडारुचिदीप्त्यर्थं धातुगणं तमकर्मकमाहुः ॥**

**कर्म**- धातुवाच्य फलको आश्रय कर्म हो ।

**भाव**- धातुवाच्य व्यापार नै भाव हो (क्रिया हो)

**कर्तृवाच्य**– कर्ता अर्थमा प्रत्यय विधान गरियो भने कर्तृवाच्य हुन्छ ।

**कर्मवाच्य**– कर्म अर्थमा प्रत्यय विधान गरेमा कर्मवाच्य हुन्छ ।

**भाववाच्य**– भाव अर्थमा प्रत्यय विधान गरेमा भाववाच्य हुन्छ ।

कर्तृवाच्यमा कर्ता उक्त हुन्छ । कर्मवाच्यमा कर्म उक्त हुन्छ । भाववाच्यमा भाव उक्त हुन्छ । यो उक्त र अनुक्त विषयको चर्चा कारकमा आउँछ । अनुक्तकर्ममा द्वितीया विभक्ति हुन्छ, अनुक्त कर्ता

**३७३. वर्तमाने लट् ३ । २ । १२३ ॥**

वर्तमानक्रियावृत्तेर्धातोर्लट् स्यात् । अटावितौ । उच्चारणसामर्थ्याल्लस्य नेत्वम् । भू सत्तायाम् ॥ १ ॥ कर्तृविवक्षायां भू ल् इति स्थिते-

**३७४. तिप्तस्झिसिप्थस्थमिब्वस्मस्तातांझथासाथांध्वमिड्वहिमहिङ् ३ । ४ । ७८ ।**

एतेऽष्टादश लादेशाः स्युः ॥

**३७५. लः परस्मैपदम् १ । ४ । ९९ ॥**

लादेशाः परस्मैपदसंज्ञाः स्युः ॥

**३७६. तङानावात्मनेपदम् १ । ४ । १०० ॥**

तङ्प्रत्याहारः शानच्कानचौ चैतत्संज्ञाः स्युः । पूर्वसंज्ञाऽपवादः ॥

---

र करणमा तृतीया विभक्ति हुन्छ । अनुक्त सम्प्रदानमा चतुर्थी विभक्ति हुन्छ । कर्म उक्त भएमा, प्रथमा, कर्ता करण सम्प्रदान पनि उक्त छन् भने प्रथमा नै हुन्छ । कर्ता, कर्म, करण संप्रदान आदि, तिङ् प्रत्यय, कृत्प्रत्यय, तद्धित प्रत्यय र समासले उक्त हुन्छन् । कहीं कहीं निपातले पनि उक्त हुन्छन् । तिङन्त प्रक्रियामा कर्तामा लकार गर्दा कर्तृवाच्य हुन्छ, कर्ता उक्त हुन्छ । कर्ममा लकार गर्दा कर्मवाच्य हुन्छ, कर्म उक्त हुन्छ । भावमा लकार गर्दा भाववाच्य हुन्छ, भाव उक्त हुन्छ । सकर्मक धातुदेखि कर्तृवाच्य र कर्मवाच्यमा लकार हुन्छन् । अकर्मक धातुदेखि कर्तृवाच्य र भाववाच्यमा लकार हुन्छन् । यहाँ कर्तृवाच्य अर्थात् कर्ता अर्थमा लकार गरिन्छ । भाव र कर्मवाच्यको कुरा पछि गरिनेछ ।

**वर्तमान इति**– वर्तमानकालमा रहेका क्रियालाई कहने धातुदेखि लट् लकार होस् ।

**अटाविति**– लट् यहाँ 'अ' र 'ट' इत्संज्ञक हुन्छन् । इत्संज्ञा भएपछि ती दुवैको लोप हुन्छ । उच्चारण गर्नाका सामर्थ्यले लकारको इत्संज्ञा हुँदैन ।

**भू इति**– भू धातु सत्ता अर्थमा छ । कर्ताको विवक्षामा 'भू+ल्' यस्तो स्थिति भएमा ।

**तिप्तस् इति**– तिप्, तस्, झि, सिप्, थस्, थ, मिप्, वस्, मस्, त, आताम्, झ, थास्, आथाम्, ध्वम्, इट्, वहि, महिङ् यी १८ लकारका स्थानमा आदेश होऊन् । महिङ्को ङकार तिङ् र तङ प्रत्याहारका लागि हो, अतः यसमा ङित्व छैन । ङित्व भए कर्ममा प्रत्यय गर्दा 'पप्रच्छिमहे' यहाँ "ग्रहिज्या०"ले संप्रसारण हुन्थ्यो । तर ङित् नहुनाले संप्रसारण हुँदैन । 'पप्रच्छिमहे'मा "सार्वधातुकमपित्" लाग्दैन यो लिट् हो । 'पप्रच्छ्' यहाँ 'च्छ्' संयोग पर हुनाले "असंयोगाल्लिट् कित्"पनि लाग्दैन । अतः'महि'यो कित् ङित् हुँदैन ।

**ल इति**– [७१] लकारका स्थानमा हुने आदेशहरु परस्मैपदसंज्ञक होऊन् ।

**तङानाविति**– तङ् प्रत्याहार र शानच्प्रत्यय, कानच्प्रत्यय पनि आत्मनेपदसंज्ञक होऊन् । यो पूर्वसंज्ञा अर्थात् परस्मैद संज्ञाको अपवाद हो ।

---

७१ लकारका स्थानमा हुने आदेश भन्नाले कृदन्तप्रकरणमा आउने "लिटःकानज्वा"ले गर्ने कानच्प्रत्यय, "क्वसुश्च"ले गर्ने क्वसुप्रत्यय, "लटः शतृशानचौ०"ले गर्ने शतृप्रत्यय र शानच्प्रत्यय "लृटः सद्वा"ले गर्ने शतृ प्रत्यय, शानच् प्रत्यय र तिङन्तका "तिपतस्झि०"ले गर्ने तिङ् यी सबै आदेश हुन् । यी मध्ये तङ्, शानच्, कानच्लाई आत्मनेपद संज्ञा हुन्छ, अरु, बाँकी रहेका तिप्, तस्आदि नौ र शतृप्रत्यय परिशेषात् परस्मैद-संज्ञक हुन्छन् । अनुहार उस्तै देखेर "पूङ्यजोः शानन्" ३।२।१२८ले गर्ने शानन्प्रत्यय, "ताच्छील्यवयोवचन शक्तिषु चानश्" ३।२।१२९ले गर्ने चानश्प्रत्ययलाई आत्मनेपद, "इङ्धार्योः शत्रकृच्छ्रिणि"३।२।१३०ले गर्ने शतृप्रत्ययलाई परस्मैपद नभन्नु । किनकि यी लकारका स्थानमा हुने आदेश हैनन् र स्वतन्त्र हुन् । लकारका स्थानमा हुने आदेशलाई मात्र आत्मनेपद, परस्मैपद संज्ञा हुन्छ ।

**३७७. अनुदात्तङित आत्मनेपदम् १ । ३ । १२ ॥**

अनुदात्तेतो ङितश्च धातोरात्मनेपदं स्यात् ॥

**३७८. स्वरितञितः कर्त्रभिप्राये क्रियाफले १ । ३ । ७२ ॥**

स्वरितेतो ञितश्च धातोरात्मनेपदं स्यात्कर्तृगामिनि क्रियाफले ॥

**३७९. शेषात्कर्तरि परस्मैपदम् १ । ३ । ७८ ॥**

आत्मनेपदनिमित्तहीनाद्धातोः कर्तरि परस्मैपदं स्यात् ॥

**३८०. तिङस्त्रीणि त्रीणि प्रथममध्यमोत्तमाः १ । ४ । १०१ ॥**

तिङ उभयोः पदयोस्त्रयस्त्रिकाः क्रमादेतत्संज्ञाः स्युः ॥

---

**अनुदात्तेति**– अनुदात्तको इत्संज्ञा हुने धातुदेखि विधान गरिएका लकारका स्थानमा आत्मने पद होस् ।

**स्वरितेति**– स्वरित्को इत्संज्ञा हुने र ञकारको इत्संज्ञा हुने धातुदेखि विधान गरिएका लकारका स्थानमा आत्मनेपद होस् क्रियाको फल कर्तामा गएमा[७२] ।

**शेषादिति**– आत्मनेपदका निमित्तले हीन भएका धातुदेखि कर्ता अर्थमा विधान गरिएका लकारका स्थानमा परस्मैपद होस् ।

**तिङइति**– तिङ्सम्बसन्धी परस्मैपद, आत्मनेपद, यी दुवै पदका तीन-तीन-त्रिक अर्थात् तीन तीनका तीन समूह क्रमैले प्रथमपुरुष, मध्यमपुरुष र उत्तमपुरुषसंज्ञक होऊन् ।

परस्मैपदमा तीन त्रिक छन् र आत्मनेपदमा पनि तीन त्रिक छन् । परस्मैपदमा ३×३=९ विभक्ति छन् । आत्मनेपदमा पनि ३×३=९ विभक्ति छन् । यिनलाई "विभक्तिश्च"ले विभक्तिसंज्ञा पनि हुन्छ । परस्मैपदका तीन त्रिक– तिप्, तस्, झि यी ३ प्रथमपुरुष । सिप्, थस्, थ यी ३ मध्यमपुरुष । मिप्, वस्, मस् यी ३ उत्तमपुरुष हुन् ।

आत्मनेपदका तीन त्रिक– त आताम् झ यी ३ प्रथमपुरुष । थास्, आथाम्, ध्वम् यी ३ मध्यमपुरुष । इट्, वहि, महिङ् यी ३ उत्तमपुरुष हुन् ।

---

७२ केवल आत्मनेपदी र केवल परस्मैपदी धातुदेखि क्रियाको फल कर्तामा जान्छ कि जान्न यो विवेक हुँदैन । उभयपदी धातुमा क्रियाको फल कर्तामा गएमा आत्मनेपद हुन्छ, क्रियाको फल कर्तामा नगएमा परस्मैद हुन्छ । जस्तो कि 'पच्'धातुदेखि आफ्ना निमित्त भात पकाएको छ भने "ओदनं पचते" यस्तो रूप हुन्छ, अर्काका निमित्त पकाएको छ भने "ओदनं पचति" यस्तो रूप हुन्छ । त्यस्तै 'कृञ्'धातुमा देवदत्तले आफ्नो घर बनाउन लागेको छ । गृहस्वामी देवदत्तलाई नै गृहनिर्माणको फल प्राप्ति हुन्छ, यसैले 'देवदत्तो गृहं कुरुते' यस्तो हुन्छ । काम गर्ने वैतनिक कामदार श्याम छ उसले पनि त्यही घर बनाउँछ, गृहनिर्माणको फल श्यामलाई जाँदैन, अतः 'श्यामो गृहं करोति' यस्तो प्रयोग हुन्छ ।

कृष्णदत्तले पुत्रेष्टि यज्ञ गर्न लागेका छन्, यज्ञको फल कृष्णदत्तलाई नै जान्छ र पुत्रप्राप्ति कृष्णदत्तलाई नै हुन्छ । अतः 'कृष्णदत्तो यजते' यस्तो प्रयोग हुन्छ । यज्ञको काम ब्राह्मणहरुले गरेका छन् तर ब्राह्मणलाई यज्ञको फल पुत्रप्राप्ति अभीप्सित छैन । अतः 'ब्राह्मणा यजन्ति' यस्तो प्रयोग हुन्छ ।

यहाँ भात पकाउने भान्सेले पनि वेतन लिएर भात पकाउँछ । घर बनाउने कामदारले पनि वेतन लिन्छन् । ब्राम्हणले पनि यज्ञ गरेको फल दक्षिणा लिन्छन् भने फलप्राप्ति उनीहरूलाई पनि भयो, भन्ने शङ्का नगर्नू । मालिकद्वारा भर्ना भएको भान्से बाहुनले गरेको पकाउने कामको मुख्य फल मालिकले नै लिन्छ । त्यस्तै घर बनाउनुको मुख्य फल त्यसको उपभोग हो । त्यो फल गृहस्वामीमा जान्छ । पुत्रेष्टि यज्ञको मुख्यफल पुत्रप्राप्ति हो । त्यो फल यजमानलाई जान्छ । पाचन, गृहनिर्माण, याजन, यी क्रियाको मुख्य फल वेतन दक्षिणा आदि होइन भन्ने कुरा स्पष्टै छ ।

३८१. **तान्येकवचनद्विवचनबहुवचनान्येकशः १ । ४ । १०२ ॥**

लब्धप्रथमादिसंज्ञानि तिङस्त्रीणि त्रीणि प्रत्येकमेकवचनादिसंज्ञानि स्युः ॥

३८२. **युष्मद्युपपदे समानाधिकरणे स्थानिन्यपि मध्यमः १ । ४ । १०५ ॥**

तिङ्वाच्यकारकवाचिनि युष्मदि प्रयुज्यमानेऽप्रयुज्यमाने च मध्यमः ॥

३८३. **अस्मद्युत्तमः १ । ४ । १०७ ॥**

तथाभूतेऽस्मद्युत्तमः ॥

३८४. **शेषे प्रथमः १ । ४ । १०८ ॥**

मध्यमोत्तमयोरविषये प्रथमः स्यात् ।

---

**तानीति**– प्रथमपुरुष मध्यमपुरुष र उत्तमपुरुषसंज्ञा पाएका तिङ्का तीन तीन प्रत्यय क्रमैले एकवचन, द्विवचन, बहुवचनसंज्ञक होऊन् ।

| **परस्मैपद** | | | | **आत्मनेपद** | | |
|---|---|---|---|---|---|---|
| **पुरुष** | **ए.व.** | **द्वि.व.** | **बहु.व.** | **ए.व.** | **द्वि.व.** | **बहु.व.** |
| प्र.पु. | तिप् | तस् | झि | त | आताम् | झ |
| म.पु. | सिप् | थस् | थ | थास् | आथाम् | ध्वम् |
| उ.पु. | मिप् | वस् | मस् | इट् | वहि | महिङ् |

**युष्मदीति**– तिङ्ले कहिने कारकलाई कहने युष्मद् शब्द प्रयोग भएमा र विवक्षा छ भने प्रयोग नभएमा पनि मध्यम पुरुष होस् ।

**अस्मदीति**– तिङ्ले कहिने कारकलाई कहने अस्मद् शब्द प्रयोग गरिएमा र विवक्षा छ भने प्रयोग नगरिएमा पनि मध्यम पुरुष होस् ।

**शेषे इति**– मध्यम पुरुष र उत्तम पुरुषको विषय नभएमा प्रथम पुरुष होस् ।

तिङ् लकारका स्थानमा हुन्छन् । लकारहरु कर्ता, कर्म र भावमा विधान गरिन्छन् । त्यसमा पनि सकर्मक धातुदेखि कर्ता र कर्ममा, अकर्मक धातुदेखि कर्ता र भावमा हुन्छन् । भाव क्रिया हो, त्यो कारक होइन । अतः तिङ्वाच्य कारक या त कर्ता हुन्छ, या त कर्म हुन्छ । कर्तामा प्रत्यय गरेको भए तिङ् कर्ताको वाचक हुन्छ । कर्ममा प्रत्यय गरेको भए तिङ् कर्मको वाचक हुन्छ । भाव अर्थमा प्रत्यय गरिएमा कारक तिङ्वाच्य हुँदैन । "युष्मद्युपदे०","अस्मद्युत्तमः", "शेषेप्रथम" यी तीनवटै सूत्रको अभिप्राय निम्नलिखित विवेचन अनुसार स्पस्ट हुन्छ ।

मध्यम पुरुष विधान गर्दा- "युस्मद्युपदे०"ले तिङवाच्यकारकवाची युष्मद् शब्द भन्नाले कर्ता अर्थमा तिङ् हुने हो भने कर्ता कारकको वाचक युस्मद् शब्द हुनु पर्‍यो । कर्म अर्थमा तिङ हुने भएमा कर्म कारकको वाचक युस्मद् शब्द हुनुपर्‍यो ।

उत्तमपुरुष विधान गर्दा- "अस्मद्युत्तमः"ले तिङ्वाच्यकारकवाची अस्मद् शब्द भन्नाले कर्ता अर्थमा तिङ् हुने भए कर्ता कारकको वाचक अस्मद् शब्द हुनुपर्‍यो । कर्म अर्थमा तिङ् हुने भए कर्म कारकको वाचक अस्मद् शब्द हुनुपर्‍यो ।

प्रथमपुरुष विधान गर्दा-"शेषे प्रथमः"ले मध्यम पुरुष उत्तम पुरुषको विषय नभएमा भनेकोले तिङ् वाच्य कारकवाची युष्मद, अस्मद् शब्दको प्रयोग वा विवक्षा नभएर अरुकै विवक्षा हुनु पर्‍यो ।

मध्यम पुरुष, उत्तम पुरुष र प्रथम पुरुष कहाँ कसरी हुन्छन् भन्ने बारे "सहायाः शिक्ष्यमाणानाम्" यो उक्ति अनुसार निष्पन्न रूपको प्रयोग भएका 'त्वम् भवसि','अहम् भवामि', 'स भवति' यी तीन उदाहरणलाई लिएर विचार गरौं । 'त्वम् भवसि' यहाँ तिङ्वाच्य कारक छ

भू ति इति जाते ॥

**३८५. तिङ्शित्सार्वधातुकम् ३ । ४ । ११३ ॥**

तिङः शितश्च धात्वधिकारोक्ता एतत्संज्ञाः स्युः ॥

**३८६. कर्तरि शप् ३ । १ । ६८ ॥**

कर्त्रर्थे सार्वधातुके परे धातोः शप् ॥

**३८७. सार्वधातुकार्धधातुकयोः ७ । ३ । ८४ ॥**

अनयोः परयोरिगन्ताङ्गस्य गुणः । अवादेशः । भवति ॥

---

कर्तृकारक । त्यो कर्तृकारकको वाचक युस्मद् शब्द त्वम् हो । त्यो यहाँ प्रयुज्यमान छ र मध्यम पुरुष भयो । त्यस्तै केवल 'भवसि' ? (हुन्छौ?) यहाँ युस्मद् शब्द प्रयुज्यमान नभएपनि युस्मद शब्दको विवक्षा हुनाले मध्यम पुरुष भयो ।

त्यस्तै 'अहम् भवामि' यहाँ पनि तिङ्वाच्य कारक छ, कर्तृकारक । त्यो कर्तृकारकको वाचक अस्मद् शब्द अहम् हो, त्यो यहाँ प्रयुज्यमान छ र उत्तम पुरुष भयो । त्यस्तै केवल 'भवामि' (हुन्छु) यहाँ अस्मद् शब्द प्रयुज्यमान नभएपनि अस्मद् शब्दको विवक्षा हुनाले उत्तम पुरुष भयो ।

त्यस्तै 'स भवति' यहाँ तिङ्वाच्य कारक छ कर्तृकारक यहाँ कर्ताको वाचक युस्मद्-अस्मद् शब्द छैन किनभने 'भवति'को अर्थ 'हुन्छ' हो । हुन्छ भन्दा साथ, 'तिमी हुन्छ', 'म हुन्छ', यो भन्न मिल्दैन तर 'त्यो हुन्छ,' 'राम हुन्छ', 'कृष्ण हुन्छ' यो भन्न मिल्छ, र यहाँ युष्मद् अस्मद् शब्द भिन्न शब्द तिङ्वाच्यकारकवाची भएकोले प्रथमपुरुष भएको हो । विशेष कुरा गुरुको मुखबाट नै जान्नुपर्दछ ।

यहाँ यो कुरा पनि याद गर्नु आवश्यक छ– भ्वादिदेखि चुरादि सम्मका मूलधातु ण्यन्तदेखि कण्ड्वादिसम्मका साधितधातु, सबैदेखि पहिले कर्तृवाच्यमा नै लकार गरिएको छ । कर्तृवाच्यमा कर्ता प्रथमान्त हुन्छ, कर्म द्वितीयान्त हुन्छ । सकर्मक धातुमा कर्म हुन्छ । अकर्मक धातुमा कर्म हुन्न ।

भावकर्म प्रक्रियामा कर्मवाच्य वा भाववाच्य लकार हुन्छन् । त्यहाँ सकर्मक धातुदेखि कर्ममा लकार हुन्छ र कर्ता तृतीयान्त हुन्छ । अकर्मक धातुदेखि भावमा प्रत्यय हुन्छ । कर्म हुँदैन, कर्ता तृतीयान्त हुन्छ । भाव भनेको क्रिया हो, क्रियामा प्रथमपुरुषको एकवचन मात्र हुन्छ । क्रियामा युष्मद् अस्मद् शब्दको सामानाधिकरण्य हुँदैन र मध्यमपुरुष उत्तमपुरुष हुँदैनन् । परिशेषात् प्रथमपुरुष हुन्छ 'गुणक्रियासु संख्या नान्वेति' (गुण र क्रियामा संख्या हुँदैन) भनेकोले औत्सर्गिक एकवचन हुन्छ, द्विवचन, बहुवचन हुँदैन ।

**भू ति इति**- भू+ति यस्तो भएपछि-

**तिङ्शिदिति**- "धातोः" भन्ने सूत्रको अधिकारमा कहिएका तिङ् र तालव्य शकारको इत्संज्ञा हुने प्रत्ययहरु सार्वधातुकसंज्ञक होऊन् । अष्टाध्यायी सूत्रपाठमा ३।१।९१ सूत्रदेखि लिएर अध्यायको समाप्तिसम्म "धातोः" यो सूत्रको अधिकार छ ।

**कर्तरीति**– कर्ता अर्थमा विधान गरिएको सार्वधातुकसंज्ञक प्रत्यय पर भएमा धातुदेखि शप् प्रत्यय होस् ।

**सार्वधातुकेति**– सार्वधातुकसंज्ञक प्रत्यय र आर्धधातुकसंज्ञक प्रत्यय पर भएमा इगन्त अङ्गका स्थानमा गुण होस् । अव् आदेश भएपछि 'भवति' हुन्छ ।

**भवति**– "लः कर्मणि च भावे०" यस सूत्रले लकारहरु सकर्मकदेखि कर्ता अर्थमा र कर्मअर्थमा अकर्मक धातुदेखि कर्ताअर्थमामा र भाव अर्थमा होऊन् भनेकोले यो भूधातु सकर्मक हो कि अकर्मक भने-

**"फलव्यापारयोरेकनिष्ठतायामकमर्कः ।**
**धातुस्तयोर्धर्मिभेदे सकर्मक उदाहृतः ॥"**

---

भवतः ॥

---

'फल र व्यापार एकै ठाउँमा रहेको धातु अकर्मक हुन्छ, फल र व्यापारको आश्रय भिन्न भएको धातु सकर्मक हुन्छ', भनेकोले यो भूधातुको अस्तित्व फल हो, हुनु व्यापार हो, 'देवदत्त हुन्छ' भन्दा फल र व्यापार यी दुवै कुरा यौटै ठाउँमा (देवदत्तमा) नै रहने हुनाले भूधातु अकर्मक छ र कर्तामा र भावमा लकार हुने भए । भावमा पछि गरौंला । अहिले कर्ता अर्थमा वर्तमान्कालको विवक्षामा "वर्तमाने लट्"ले लट् लकार भयो, 'भू+ल्' भयो, "तिप्तस्झिसिप्०" यो सूत्रले लकारका स्थानमा तिप्, तस् आदि १८ वटै प्रत्यय पायो, पाएमा "लः परस्मैपदम्०"ले तिप्, तस्, झि आदि जम्मैलाई परस्मैपदसंज्ञा पायो, त्यसलाई बाधेर "तङानावात्मनेपदम्"ले त, आताम्, झ आदि नौलाई र शानच्, कानच्लाई आत्मनेपद संज्ञा भयो, बाँकी तिप्, तस्, झि आदि नौ र शतृलाई परस्मैपद संज्ञा भयो । भएपछि-

"अनुदात्तङित०"ले अनुदात्त र ङित् धातुदेखि आत्मनेपद र "स्वरितञितः कर्त्रभिप्राये०"ले स्वरितको र ञकारको इत्संज्ञा हुने धातुदेखि क्रियाको फल कर्तामा गएमा आत्मनेपद होस् भनेको छ । यो भू धातु अनुदात्तेत्, ङित्, स्वरितेत् र ञित् कुनै पनि छैन र "शेषात्कर्तरि परस्मैपदम्"ले भू धातुदेखि परस्मैपद तिप्, तस् आदि नौ पायो, पाएमा "तिङस्त्रीणि०"ले तिप्, तस्, झिलाई प्रथमपुरुष, सिप्, थस, थ लाई मध्यमपुरुष, मिप् वस्, मस् लाई उत्तमपुरुष, त, आताम्, झलाई प्रथमपुरुष थास्, आथाम्, ध्वम्लाई मध्यमपुरुष, इट्, वहि, महिलाई उत्तमपुरुष संज्ञा भयो, भएपछि "तान्येकवचनद्विवचनबहुचनान्येकशः"ले तिप्लाई एकवचन संज्ञा, तस्लाई द्विवचन संज्ञा, झिलाई बहुवचन संज्ञा, सिप्लाई एकवचन संज्ञा, थस्लाई द्विवचन संज्ञा, थलाई बहुवचन संज्ञा, मिप्लाई एकवचन संज्ञा, वस्लाई द्विवचनसंज्ञा, मस्लाई बहुवचनसंज्ञा भयो, एवं आत्मनेपदमा पनि तलाई एकवचन संज्ञा, आताम्लाई द्विवचन संज्ञा, झलाई बहुवचन संज्ञा, थास्लाई एकवचन संज्ञा, आथाम्लाई द्विवचन संज्ञा, ध्वम्लाई बहुवचन संज्ञा, इट्लाई एकवचन, वहिलाई द्विवचन संज्ञा, महिलाई बहुचवन संज्ञा भयो ।

अब तिङ्ले कहिने कारकलाई कहने युष्मद्, अस्मद् शब्दका विवक्षा नभएकोले "युष्मद्युपपदे०" यो सूत्र र "अस्मद्युत्तमः" यो सूत्र पनि लागेन, मध्यमपुरुष र उत्तमपुरुष भएन । "शेषे प्रथमः" लाएर प्रथमपुरुष तिप्, तस्, झि पाएकोमा "द्व्येकयोर्द्विवचनैकवचने" लाएर एकत्वसंख्याविशिष्टरूप अर्थ बुझिंदामा लकारका स्थानमा प्रथमपुरुषको एकवचन तिप् आयो । पकारको "हलन्त्यम्"ले इत्संज्ञा भयो, "तस्य लोपः"ले लोप भयो, "धातोः" भन्ने सूत्रका अधिकारमा कहिएका तिङ्प्रत्यय हुनाले 'ति' यसलाई "तिङ्शित्सार्वधातुकम्"ले सार्वधातुक संज्ञा भयो, अनि कर्ता अर्थमा विधान् गरिएको सार्वधातुकसंज्ञकप्रत्यय ति पर हुनाले भूधातुदेखि "कर्तरि शप्"ले शप् प्रत्यय भयो, अनुबन्ध लोप भयो, 'भू+अ+ति' भयो, "सार्वधातुकार्धधातुकयोः"ले "इको गुणवृद्धी" अथवा "अलोऽन्त्यस्य"लाएर भूका ऊकारका स्थानमा गुण भयो, 'भो+अ+ति' अव् आदेश भयो, 'भवति' सिद्ध भयो ।

**भवतः**- भू धातुदेखि "लः कर्मणि च भावे०"ले सबै लकार पाएकोमा वर्तमानकालको विवक्षामा 'लट्' भयो, 'भू+ल्' भयो, लकारका स्थानमा "तिप्तस्झि०"ले तिप् आदि सबै आदेश पाएकोमा "शेषात्कर्तरि०"ले परस्मैपद पायो, पूर्ववत् प्रथम, मध्यम, उत्तमपुरुष संज्ञा र एकवचन, द्विवचन, बहुवचन संज्ञा भएपछि, मध्यम र उत्तमपुरुषको विषय नभएकोले "शेषे प्रथमः"ले प्रथमपुरुष तिप्, तस्, झि पाएकोमा "द्व्येकयोः०"लाएर द्वित्वसंख्याविशिष्टरूप अर्थ बुझिंदामा द्विवचन तस् भयो, 'भू+तस्' भयो, तस्का सकारको "हलन्त्यम्"ले इत्संज्ञा पाएको "न विभक्तौ तुस्माः"ले निषेध भयो, पूर्ववत् तस्लाई सार्वधातुक संज्ञा गुण अव् आदेश भयो, तस्का सकारको रुत्व, विसर्ग भयो, 'भवतः' सिद्ध भयो ।

---

**३८८. झोऽन्तः ७ । १ । ३ ॥**

प्रत्ययावयवस्य झस्यान्तादेशः ।

"अतो गुणे" । भवन्ति । भवसि । भवथः । भवथ ॥

**३८९. अतो दीर्घो यञि ७ । ३ । १०१ ॥**

अतोऽङ्गस्य दीर्घो यञादौ सार्वधातुके । भवामि ।

---

**झोऽन्त इति-** प्रत्ययको अवयव झकारका स्थानमा अन्त आदेश होस् ।

**अत इति-** "अतो गुणे"ले पररूप हुन्छ ।

**भवन्ति-** भू धातुदेखि कर्ता अर्थमा वर्तमानकालमा "वर्तमाने लट्"ले लट् लकार भयो, लकारका स्थानमा तिप्, तस्, झि आदि सबै प्रत्यय पाएकोमा तिप् आदिलाई परस्मैपद र त आदिलाई आत्मनेपद संज्ञा भएपछि "शेषात्कर्तरि परस्मैपदम्"ले परस्मैपद सबै पाएकोमा "शेषे प्रथमः"ले प्रथमपुरुष सबै पाएको थियो । बहुत्वसंख्याविशिष्ट अर्थ बुझिंदामा "बहुषु बहुवचनम्"लाएर लकारका स्थानमा बहुवचन झि भयो, 'भू+झि' भयो, झिका झकारका स्थानमा "झोऽन्तः"ले अन्त आदेश भयो, अन्तिलाई सार्वधातुक संज्ञा शप् प्रत्यय भएपछि शित्वात् शप् प्रत्ययलाई पनि सार्वधातुक संज्ञा भयो, "सार्वधातुकार्धधातुकयोः"ले भूका उकारका स्थानमा गुण अव् आदेश भयो, "अतो गुणे"ले पररूप भयो, 'भवन्ति' सिद्ध भयो ।

**भवसि-** भू धातुदेखि कर्ता अर्थमा "वर्तमाने लट्"ले लट् लकार भयो, लकारका स्थानमा "तिप्तस्झि०"ले तिबादि अठार सबै पाएकोमा आत्मनेपद परस्मैपदसंज्ञा भएपछि "शेषात्कर्तरि०"ले तिबादि नौमात्र पायो । प्रथम, मध्यम, उत्तम र एकवचन, द्विवचन, बहुवचनसंज्ञा भएपछि तिङ्वाच्य करकवाची युष्मद् शब्दको विवक्षा हुनाले "युष्मद्युपपदे समानाधिकरणे०"ले मध्यमपुरुष सबै पायो । "द्वेचकयोर्द्विवचनैकवचने" लगाएर एकत्वसंख्याविशिष्टरूप अर्थ बुझिंदामा एकवचन सि भयो, 'भू+सि' भयो, सि लाई सार्वधातुकसंज्ञा भयो, "कर्तरि शप्"ले शप् भयो, 'भू+अ+सि' भयो, शप्लाई पनि सार्वधातुकसंज्ञा भएपछि, "सार्वधातुकार्धधातुकयोः"ले भूका ऊकारका स्थानमा गुण अव् आदेश भयो, 'भवसि' सिद्ध भयो ।

**भवथः-** भू धातुदेखि कर्ता अर्थमा "वर्तमाने लट्"ले लट् लकार भयो, लकारका स्थानमा तिबादि १८ सबै पाएकोमा पूर्ववत् परस्मैपद मध्यमपुरुषको द्विवचन थस् आयो, 'भू+थस्' भयो, सकारको इत्संज्ञा निषेध भयो, थस्लाई सार्वधातुकसंज्ञा भएपछि "कर्तरि शप्"ले शप्प्रत्यय भयो, शप्लाई पनि सार्वधातुकसंज्ञा भएपछि पूर्वसूत्रले गुण भयो, 'भो+अ+थस्' भयो, अव् आदेश भयो, 'भवथस्' भयो, थस्का सकारको रुत्व, विर्सग भयो, 'भवथः' सिद्ध भयो ।

**भवथ-** भू धातुदेखि लट्, लट्का लकारका स्थानमा पूर्ववत् थ, 'भू+थ', शप् 'भू+अ+थ' गुण, 'भो+अ+थ', अव् आदेश, 'भवथ' सिद्ध भयो ।

**अत इति-** ह्रस्व अकार अन्तमा हुने अङ्गका स्थानमा दीर्घ होस् यञ् प्रत्याहार आदिमा हुने सार्वधातुकसंज्ञक प्रत्यय पर भएमा "यस्मात्प्रत्ययविधि०"ले तिलाई पर राखेर भवलाई अङ्गसंज्ञा हुन्छ ।

**भवामि-** भू धातुदेखि कर्ता अर्थमा "वर्तमाने लट्"ले लट् लकार भयो, लकारका स्थानमा "शेषात्कर्तरि०"ले परस्मैपद तिबादि सबै पाएकोमा यहाँ तिङ् वाच्यकारकवाची अस्मद् शब्दको विवक्षा हुनाले "अस्मद्युत्तमः"ले अस्मत्शब्दको विवक्षा हुनाले उत्तमपुरुष मिप्, वस्, मस् पाएकोमा एकत्वसंख्याविशिष्टरूप अर्थ बुझिंदामा एकवचन मिप् भयो, पकारको "हलन्त्यम्"ले इत्संज्ञा लोप भयो, 'भू+मि' भयो, पूर्ववत् "तिङ्शित्०"ले सार्वधातुकसंज्ञा, शप्, गुण भयो, 'भो+अ+मि'

भवावः । भवामः । स भवति । तौ भवतः । ते भवन्ति । त्वं भवसि । युवां भवथः । यूयं भवथ । अहं भवामि । आवां भवावः । वयं भवामः ॥

**३९०. परोक्षे लिट् ३ । २ । ११५ ॥**

भूतानद्यतनपरोक्षार्थवृत्तेर्धातोर्लिट् स्यात् । लस्य तिबादयः ॥

**३९१. परस्मैपदानां णलतुसुस्थलथुसणल्वमाः ३ । ४ । ८२ ॥**

लिटस्तिबादीनां नवानां णलादयः स्युः । भू अ इति स्थिते-

**३९२. भुवो वुग् लुङ्लिटोः ६ । ४ । ८८ ॥**

भुवो वुगागमः स्यात् लुङ्लिटोरचि ॥

---

अव् आदेश भयो, 'भव+मि' भयो, अनि "यस्मात्प्रत्ययविधि०"ले मिलाई पर राखेर भवलाई अङ्गसंज्ञा[७३] भयो । यञ् प्रत्याहार आदिमा हुने सार्वधातुकसंज्ञक प्रत्यय मि पर हुनाले ह्रस्व अकारान्त अङ्ग भवका स्थानमा "अतो दीर्घो यञि"ले दीर्घ पाएकोमा "अलोऽन्त्यस्य" लाएर भवका अकारका स्थानमा दीर्घ आकार भयो, 'भवामि' सिद्ध भयो ।

**भवावः**- भू धातुदेखि कर्ता अर्थमा लट् भयो, 'भू+ल्' भयो, लकारका स्थानमा पूर्ववत् परस्मैपद उत्तमपुरुषको द्विवचन वस् भयो, 'भू+वस्', शप् भयो, 'भू+अ+वस्' गुण, 'भो+अ+वस्' भयो, अव् आदेश 'भव+वस्' दीर्घ 'भवा+वस्', सकारको रुत्व, विसर्ग भयो, 'भवावः' सिद्ध भयो ।

**भवामः**- भू धातुदेखि कर्ता अर्थमा वर्तमानकालमा लट्, 'भू+ल्' भयो, लकारका स्थानमा पूर्ववत् परस्मैपदको उत्तमपुरुष बहुवचन मस् भयो, पूर्ववत् शप्, गुण, अव् आदेश, दीर्घ भयो, 'भवामस्', रुत्व, विसर्ग भयो, 'भवामः' सिद्ध भयो ।

यसरी लट् लकारका प्रथम, मध्यम, उत्तमपुरुषका एकवचन, द्विवचन, बहुवचनका सबै रूप सिद्ध भए । यसको प्रयोग मूल अनुसार देखाइन्छ-

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्र.पु. | स भवति (त्यो हुन्छ) | तौ भवतः (ती दुई हुन्छन्) | ते भवन्ति (तिनीहरू हुन्छन्) |
| **म.पु.** | त्वं भवसि (तिमी हुन्छौ) | युवां भवथः (तिमी दुई हुन्छौ) | यूयं भवथ (तिमीहरू हुन्छौ) |
| **उ.पु.** | अहं भवामि (म हुन्छु) | आवां भवावः (हामी दुई हुन्छौं) | वयं भवामः (हामीहरू हुन्छौं) |

**परोक्ष इति**- भूत अनद्यतन परोक्षकालमा रहेको क्रियालाई कहने धातुदेखि लिट् लकार होस् । लकारका स्थानमा तिप् आदि आदेश हुन्छन् ।

**परस्मा इति**- लिट् लकारका स्थानमा विधान गरिएका तिप् आदि नौका स्थानमा णल्, अतुस्, उस्, थल्, अथुस्, अ, णल्, व, म, यी नौ आदेश होऊन् ।

प्रथमपुरुष- तिप्, तस्, झिका स्थानमा णल्, अतुस्, उस्, मध्यमपुरुष- सिप्, थस् थका स्थानमा थल्, अथुस्, अ, उत्तमपुरुष- मिप्, वस्, मस्का स्थानमा णल्, व, म आदेश हुन्छन् ।

**भुवो वुगिति**- भू धातुको वुक् आगम् होस् लुङ् र लिट्सम्बन्धी अच् पर भएमा ।

---

[७३] जो प्रत्यय जसदेखि गरिन्छ, तदादि शब्दस्वरूप त्यो प्रत्यय पर भएमा अङ्गसंज्ञक हुन्छ । यहाँ ति प्रत्यय भूदेखि गरिन्छ । भव यसको आदिमा भू छ शप् प्रत्यय बीचमा छ । अतः ति प्रत्यय पर भएमा शप् प्रत्यय सहित भवलाई अङ्गसंज्ञा हुन्छ । बीचमा अर्को प्रत्यय नभएमा आफ्नो आदिमा आफै मानेर अङ्गसंज्ञा हुन्छ ।

**३९३. लिटि धातोरनभ्यासस्य ६ । १ । ८ ॥**

लिटि परेऽनभ्यासधात्ववयवस्यैकाचः प्रथमस्य द्वे स्तः, आदिभूतादचः परस्य तु द्वितीयस्य । भूव् भूव् अ इति स्थिते-

**३९४. पूर्वोऽभ्यासः ६ । १ । ४ ॥**

अत्र ये द्वे विहिते तयोः पूर्वोऽभ्याससंज्ञः स्यात् ॥

**३९५. हलादिः शेषः ७ । ४ । ६० ॥**

अभ्यासस्यादिर्हल् शिष्यते, अन्ये हलो लुप्यन्ते । इति वलोपः ॥

**३९६. ह्रस्वः ७ । ४ । ५९ ॥**

अभ्यासस्याचो ह्रस्वः स्यात् ।

**३९७. भवतेरः ७ । ४ । ७३ ॥**

भवतेरभ्यासोकारस्य अः स्याल्लिटि ॥

**३९८. अभ्यासे चर्च ८ । ४ । ५४ ॥**

अभ्यासे झलां चरः स्युर्जशश्च । झशां जशः खयां चर इति विवेकः ।

---

**लिटीति-** लिट् लकार पर भएमा अभ्यासभिन्न धातुको अवयव प्रथम एक अच्को द्वित्व होस्, आदि भूत अच्देखि पर छ भने त दोस्रा अच्को द्वित्व होस् ।

यहाँ द्वित्व गर्दा हलादि धातु एकाच् भएपनि अनेकाच् भए पनि प्रथम एकाच्को नै द्वित्व हुन्छ । अच्को द्वित्व हुँदा अच्मा आश्रित पूर्व परका हल् वर्णको पनि द्वित्व हुन्छ । एकाच्मा भू धातुमा "व्यपदेशिवद्भाव"ले त्यही अच्लाई प्रथम मान्नु पर्दछ । अजादि धातु अनेकाच् भए दोस्रो अच्को र एकाच् भए त्यसैको द्वित्व हुन्छ ।

अजादि अनेकाच् उर्णु आदि धातु हुन् । अजादि एकाच् अत् आदि धातु हुन् । भूव्, भूव् अ यस्तो स्थितिमा ।

**पूर्व इति-** छैटौं अध्यायको द्वित्वप्रकरणमा जो द्वित्व विधान गरिए ती मध्ये पहिलो समुदाय अभ्याससंज्ञक होस् ।

**हलादीति-** अभ्यासको आदिहल् शेष रहन्छ, अरू हल् लुप्त हुन्छन् ।

**इतीति-** यो सूत्रले वकारको लोप हुन्छ ।

**ह्रस्व इति-** अभ्यासका अच्का स्थानमा ह्रस्व होस् ।

**भवतेरिति-** भूधातुका अभ्यासको ऊकारका स्थानमा अकार होस्, लिट् पर भएमा ।

**अभ्यास इति-** अभ्यासका झल्का स्थानमा चर् होऊन्, जश् पनि होऊन् ।

**झशां जश इति-** झश्का स्थानमा जश् हुन्छन् । खय्का स्थानमा चर् हुन्छन् भन्ने विवेक गरिएको छ ।

अभ्यासमा कवर्ग र हकार भएमा "कुहोश्चुः" लागेपछि मात्र "अभ्यासे चर्च" लाग्छ । अतः "अभ्यासे चर्च"अभ्यासमा कवर्ग र हकार भएको अवस्था पाउनै सक्दैन ।

झ, भ, ढ, ध का स्थानमा आन्तरतम्यात् ज, ब, ड, द हून्छन् । ज, ब, ड, दका स्थानमा पनि ज, ब, ड, द नै हुन्छन् । फ, छ, ठ, थका स्थानमा आन्तरतम्यात् क्रमशः प, च, ट, त हुन्छन् । प, च, ट, त का स्थानमा पनि प च, ट त नै हुन्छन् । श, ष, सका स्थानमा श, ष, स नै हुन्छन् । यहाँ यही विवेक गरिएको छ ।

---

बभूव । बभूवतुः । बभूवुः ॥

**३९९. लिट् च ३ । ४ । ११५ ॥**

लिडादेशस्तिङार्धधातुकसंज्ञः ॥

**४००. आर्धधातुकस्येड् वलादेः ७ । २ । ३५ ॥**

वलादेरार्धधातुकस्येडागमः स्यात् । बभूविथ । बभूवथुः ।

---

**बभूव-** भूत अनद्यतन परोक्ष कालमा रहेको क्रियालाई कहने भू धातुदेखि लिट् लकार भयो, अनुबन्ध लोप भयो, 'भू+ल्' भयो, लकारका स्थानमा पूर्ववत् प्रथम पुरुषको एकवचन तिप् भयो, तिप्का पकारको "हलन्त्यम्"ले इत्संज्ञा भयो, 'भू+ति' भयो, 'ति' यो लिट्का स्थानमा आदेश भएको तिङ् हुनाले "लिट् च"ले आर्धधातुक संज्ञा भयो । आर्धधातुक पर हुनाले भू धातुदेखि शप् प्रत्यय भएन । "परस्मैपदानां णलतुसुस्०"ले णल् आदेश भयो, 'भू+अ' भयो, "भुवो वुग्लुङ्लिटोः"ले वुक् आगम भयो, अनुबन्ध लोप भयो, कित्वात् भूको अन्तमा वकार भयो । 'भूव्+अ'भयो, 'भूव्+अ' यहाँ "लिटि धातोरनभ्यासस्य"ले अभ्यास भिन्न धातुको अवयव प्रथम एकाच् भूका ऊकारको मात्र द्वित्व पाएकोमा "वृक्षप्रचलने शाखाःअपि प्रचलन्ति" (रूख हल्लँदा हाँगा पनि हल्लन्छन्) यो न्याय लगाएर भूव् यो समुदायको द्वित्व भयो, 'भूव्+भूव्+अ' भयो, पूर्वको भूव्लाई "पूर्वोभ्यासः"ले अभ्याससंज्ञा भयो, "हलादिः शेषः"ले भूव्का वकारको लोप भयो, 'भू+भूव्+अ' भयो, अभ्यास (भू)का ऊकारको स्थानमा "ह्रस्वः"ले ह्रस्व भयो, 'भु+भूव्+अ' भयो, "भवतेरः"ले ऊकारको स्थानमा अकार भयो, 'भ+भूव्+अ' भयो, "अभ्यासे चर्च"ले झश्- भकारका स्थानमा जश्त्व हुँदा आन्तरतम्याद् ब भयो, 'बभू+व्+अ' भयो, वर्णमेलन भयो, 'बभूव' सिद्ध भयो ।

**बभूवतुः-** भूत अनद्यतन परोक्षकालिक क्रिया बुझिंदामा भू धातुदेखि लिट् भयो, 'भू+ल्' भयो, लकारका स्थानमा प्रथमपुरुषको द्विवचन तस् भयो, 'भू+तस्' भयो, "परस्मैपदानां णल तुसुस्"ले तस्का स्थानमा अतुस् भयो, 'भू+अतुस्', वुक् आगम, 'भूव्+अतुस्', द्वित्व, हलादि शेष, ह्रस्व, अकार, जश्त्व पूर्ववत् भयो, 'भूव्+भूव्+अतुस्', 'भु+भुव्+अतुस्', 'भ+भूव्+अतुस्' 'बभूव्+अतुस्' भयो, रुत्व, विसर्ग भयो, 'बभूवतुः' सिद्ध भयो ।

**बभूवुः-** भू धातुदेखि भूत अनद्यत परोक्ष कालिक क्रिया बुझिंदामा लिट् लकार भयो, लकारका स्थानमा बहुत्वसंख्या विशिष्टरूप अर्थ बुझिंदामा प्रथमपुरुषको बहुवचन झि भयो, झिका स्थानमा "परस्मैपदानां०"ले उस् आदेश भयो, 'भू+उस्', वुक् आगम 'भूव्+उस्' द्वित्व, 'भूव्+भूव्+उस्' हलादिशेष 'भू+भूव्+उस्', ह्रस्व, 'भु+भूव्+उस्', अकार 'भ+भूव्+उस्', जश्त्व, 'बभूव्+उस्', वर्णमेलन, रुत्व, विसर्ग भयो, 'बभूवुः' सिद्ध भयो ।

**लिट चेति-** लिट्का स्थानमा आदेश भएको तिङ् आर्धधातुकसंज्ञक होस् ।

**आर्धधातुकस्येति-** वल् आदिमा हुने आर्धधातुकसंज्ञक प्रत्ययको इड् आगम होस् ।

**बभूविथ-** भूत अनद्यतन परोक्षकालिक क्रिया बोधक भू धातुदेखि लिट् लकार भयो, लकारका स्थानमा मध्यमपुरुषको एकवचन सिप् भयो, सिप्लाई आर्धधातुकसंज्ञा सिप्का स्थानमा "परस्मैपदानां०"ले थल् आदेश अनुबन्धलोप भएपछि 'भू+थ' भयो, "आर्धधातुकस्येड् वलादेः"ले थ को इट् आगम भयो, 'भूव्+इथ' यहाँ, "लिटि धातोः०"ले द्वित्व भयो, 'भूव्+भूव्+इथ' हलादि शेष भयो, 'भू+भूव्+इथ', भयो, ह्रस्व, अत्व, 'भ+भूव्+इथ' जश्त्व, 'बभूव्+इथ'- 'बभूविथ' सिद्ध भयो ।

**बभूवथुः-** भूत अनद्यतन परोक्ष कालिक क्रियाबोधक भू धातुदेखि लिट्, लिट्का स्थानमा मध्यमपुरुष द्विवचन थस्, थस्का स्थानमा अथुस्, द्वित्व, अभ्यासकार्य आदि भयो, 'बभूवथुः' सिद्ध भयो ।

बभूव । बभूव । बभूविव बभूविम ॥

**४०१. अनद्यतने लुट् ३ । ३ । १५ ॥**

भविष्यत्यनद्यतनेऽर्थे धातोर्लुट् ॥

**४०२. स्यतासी लृलुटोः ३ । १ । ३३ ॥**

धातोः स्यतासी एतौ प्रत्ययौ स्तो लृलुटोः परतः । शबाद्यपवादः । लृ इति लृङ्लृटोर्ग्रहणम् ॥

**४०३. आर्धधातुकं शेषः ३ । ४ । ११४ ॥**

तिङ्शिद्भ्योऽन्यो धातोरिति विहितः प्रत्यय एतत्संज्ञ स्यात् । इट् ॥

**४०४. लुटः प्रथमस्य डारौरसः २ । ४ । ८५ ॥**

लुटः प्रथमस्य डारौरस् एते क्रमात् स्युः । डित्त्वसामर्थ्यादभस्यापि टेर्लोपः । भविता ॥

---

**बभूव-** भूत अनद्यतन परोक्ष कालिक क्रियाबोधक भू धातुदेखि लिट्, लकारका स्थानमा मध्यमपुरुष बहुवचन थ, थका स्थानमा अ, द्वित्व, अभ्यासकार्य आदि भयो, 'बभूव' सिद्ध भयो ।

**बभूव-** पूर्वोक्त भूत अनद्यतन परोक्ष कालिक क्रियाबोधक भू धातुदेखि लिट् लकारका स्थानमा उत्तमपुरुषको एकवचन मिप्, मिप्का स्थानमा "परस्मैपदानां०"ले णल् 'भू+अ', वुक् आगम, द्वित्व, अभ्यासकार्य आदि क्रमशः भयो, 'बभूव' सिद्ध भयो ।

**बभूविव-** भूत अनद्यतन परोक्ष कालिक क्रियालाई कहने भू धातुदेखि लिट् भयो, लकारका स्थानमा वस्, वस्का स्थानमा व आदेश भयो, इट् आगम भयो, 'भूव्+इव' द्वित्व, अभ्यास कार्य आदि भयो, 'बभूविव' सिद्ध भयो ।

**बभूविम-** पूर्ववत् 'भू+ल्', 'भू+मस्', 'भू+म', 'भू+इम', 'भूव्+इम', 'भूव्+भूव्+इम', 'भूभूव्+इम', 'भुभूव्+इम', 'भभूव्+इम', 'बभूव्+इम'= 'बभूविम' सिद्ध भयो ।

**अनद्यतन इति-** भविष्यत् अनद्यतनकालमा रहेको क्रियालाई कहने धातुदेखि लुट् लकार होस् ।

**स्यतासीति-** धातुदेखि स्य प्रत्यय र तासि प्रत्यय क्रमैले होऊन् । लृलकार र लुट्लकार पर भएमा । तासिका इकारको इत्संज्ञा लोप हुन्छ ।

**शबादीति-** "स्यतासी लृलुटोः" यो सूत्र शप् आदि प्रत्ययको अपवाद अर्थात् बाधक हो । भ्वादिगणमा शप्लाई, दिवादिमा श्यन्लाई, तुदादिमा शलाई यस्तै सबै गणका विकरण प्रत्ययहरूलाई यो सूत्रले बाध्दछ ।

**लृ इतीति-** यहाँ लृ भन्नाले लृङ् र लृट् दुवैको ग्रहण हुन्छ ।

**आर्धधातुकमिति-** तिङ् र शित् प्रत्ययदेखि भिन्न 'धातोः' यो शब्दको उच्चारण गरेर विधान गरिएको प्रत्यय आर्धधातुकसंज्ञक होस् ।

**लुट इति-** लुट्लकारसम्बन्धी प्रथमपुरुषका एक द्वि बहुवचनका स्थानमा डा, रौ, रस् क्रमैले होऊन् ।

**डित्त्वसामर्थ्यादिति-** डित् विधान गर्नाका सामर्थ्यले भसंज्ञा नभए पनि टिको लोप हुन्छ । "टेः" यो सूत्रले डित् प्रत्यय पर भएमा भसंज्ञक अङ्ग भएमा मात्र टिको लोप हुन्छ । तर यहाँ भसंज्ञा हुँदैन, टिको लोप नगर्ने हो भने डा आदेशमा डित् गर्नको केही फल छैन । अतः डित्त्व सामर्थ्यले भसंज्ञा नभए पनि टिको लोप हुन्छ ।

**भविता-** अनद्यतन भविष्यत्कालमा रहेको क्रिया बुझाउने भू धातुदेखि "अनद्यतने लुट्"ले

**४०५. तासस्त्योर्लोपः ७ । ४ । ५० ॥**

तासेरस्तेश्च सस्य लोपः स्यात्सादौ प्रत्यये परे ॥

**४०६. रि च ७ । ४ । ५१ ॥**

रादौ प्रत्यये तथा । भवितारौ । भवितारः । भवितासि । भवितास्थः । भवितास्थ । भवितास्मि । भवितास्वः । भवितास्मः ॥

**४०७. लृट् शेषे च ३ । ३ । १३ ॥**

भविष्यदर्थाद्धातोर्लृट् क्रियार्थायां क्रियायां सत्यामसत्यां वा ।

---

लुट् भयो, उकार र टकारको इत्संज्ञा र लोप भयो, 'भू+ल्' भयो, लकारका स्थानमा प्रथमपुरुषको एकवचन तिप् भयो, 'भू+ति' भयो, तिलाई सार्वधातुकसंज्ञा भएपछि, "कर्तरि शप्"लाई बाधेर "स्यतासी०"ले तासिप्रत्यय भयो, तासिका इकारको "उपदेशेऽजनुनासिक०"ले इत्संज्ञा भयो, "तस्य लोपः"ले लोप भयो, 'भू+तास्+ति' भयो, तास् यसलाई "आर्धधातुकं शेषः"ले आर्धधातुकसंज्ञा भयो, "आर्धधातुकस्येड्वलादेः"ले इट् आगम भयो, 'भू+इतास्+ति' भयो, "सार्वधातुकार्धधातुकयोः"ले भूका ऊकारका स्थानमा गुण अव् आदेश भयो, 'भवितास्+ति' भयो, तिकास्थानमा "लुटः प्रथमस्य०"ले डाआदेश भयो, डकारको इत्संज्ञा लोप भयो, 'भवितास्+आ' भयो, डित्वसामर्थ्यात् भसंज्ञा नभएपनि भवितास् यसको टि- आस् को लोप भयो, 'भवित्+आ', 'भविता' सिद्ध भयो ।

**तासस्त्योरिति-** तास् प्रत्यय र अस् धातुका दन्त्य सकारको लोप होस् सकार आदिमा हुने प्रत्यय पर भएमा ।

**रि चेति-** तास्प्रत्यय र अस् धातुका दन्त्य सकारको लोप होस् रेफ आदिमा हुने प्रत्यय पर भएमा ।

**भवितारौ-** अनद्यतन भविष्यत् काल बुझिंदामा भू धातुदेखि पूर्वसूत्रले लुट्, अनुबन्ध लोप भयो, लकारका स्थानमा प्रथमपुरुष द्विवचन तस् भयो, 'भू+तस्' भयो, पूर्ववत् आर्धधातुकसंज्ञा र इट् भयो, 'भू+इतास्+तस्' भयो, भूका स्थानमा गुण, अव् आदेश भयो, 'भवितास्+तस्'भयो, "लुटः प्रथमस्य०"ले तस्का स्थानमा रौ आदेश भयो, 'भवितास्+रौ' भयो, "रि च"ले तास्का सकारको लोप भयो, 'भवितारौ' सिद्ध भयो ।

**भवितारः-** भू धातु लुट्को प्रथमपुरुष बहुवचन झिमा पूर्ववत् शप्लाई बाधेर तासिप्रत्यय इट् आगम, गुण, अव्, आदेश भएपछि 'भवितास्+झि' भयो, "झोऽन्तः"लाई बाधेर "लुटः प्रथमस्य०"ले रस् आदेश भयो, "रि च"ले सकारको लोप भयो, 'भवितारस्' भयो, रुत्व, विसर्ग भयो, 'भवितारः' सिद्ध भयो ।

**भवितासि-** भू धातुदेखि लुट् लकारको मध्यमपुरुषको एकवचन सिप्मा पूर्ववत् 'भू+सि' भयो, तासिप्रत्यय भयो, 'भू+तास्+सि' भयो, इट्, आगम्, 'भू+इतास्+सि', गुण, अव् आदेश 'भवितास्+सि' भएपछि "तासस्त्योर्लोपः"ले तास्का सकारको लोप भयो, 'भवितासि' सिद्ध भयो ।

**भवितास्थः-** पूर्ववत् भू धातुदेखि लुट् लकार मध्यमपुरुषको द्विवचन थस्, 'भू+थस्' पूर्ववत् तासिप्रत्यय, इट्, गुण, अव् आदेश 'भवितास्थस्' रुत्व, विसर्ग 'भवितास्थः' सिद्ध भयो ।

**भवितास्थ-** भू धातुदेखि लुट् मध्यमपुरुष बहुवचन थ, तासि, इट्, गुण, अव् आदेश, 'भवितास्थः' सिद्ध भयो । यस्तै प्रकारले उत्तमपुरुषको एकवचनमा 'भवितास्मि' द्विवचनमा 'भवितास्वः' बहुवचनमा 'भवितास्मः' यी रूप सिद्ध हुन्छन् ।

स्यः । इट् । भविष्यति । भविष्यतः । भविष्यन्ति । भविष्यसि । भविष्यथः । भविष्यथ । भविष्यामि । भविष्यावः । भविष्यामः ॥

**४०८. लोट् च ३ । ३ । १६२ ॥**

विध्याद्यर्थेषु धातोर्लोट् ॥

---

**लृट् इति-** भविष्यत् अर्थमा रहेको क्रियालाई बुझाउने धातुदेखि लृट् लकार होस्, क्रिया निमित्तक क्रिया भएमा र नभएमा पनि । "लृट् शेषे च" यस सूत्रमा [७४] "तुमुन्ण्वुलौ क्रियायां क्रियार्थायाम्"को अनुवृत्ति आउँछ, त्यसको अर्थ हो क्रियानिमित्तक क्रिया भएमा । सूत्रमा "शेषे च" यसको अर्थ हो क्रियानिमित्तक क्रिया नभएमा पनि । क्रियानिमित्तक क्रिया भएमा पूतं भविष्यति, कृतं भविष्यति, इत्यादि उदाहरण हुन् । नभएमा स भविष्यति, आदि उदाहरण हुन् । तुमुन्, ण्वुल्, कृत्प्रत्यय हुन् । यी क्रियानिमत्तक क्रिया भएमा हुन्छन् । जस्तै- भोक्तुं व्रजति, दर्शको याति ।

**भविष्यति-** भू धातुदेखि भविष्यत् अर्थ बुझिंदामा "लृट् शेषे च"ले लृट् लकार भयो, ऋ र ट् को इत्संज्ञा, लोप भयो, 'भू+ल्' भयो, लकारका स्थानमा परस्मैपदको प्रथमपुरुष एकवचन तिप् भयो, 'भू+ति' भयो, तिलाई सार्वधातुकसंज्ञा भयो, "कर्तरि शप्"ले शप् पायो, त्यसलाई बाधेर "स्यतासी लृलुटोः"ले स्य प्रत्यय भयो, स्यलाई आर्धधातुकसंज्ञा भयो, इट् आगम भयो, 'भू+इस्य+ति' भूका ऊकारका स्थानमा गुण, अव् आदेश र स्यका सकारको "आदेशप्रत्यययोः"ले षत्व भयो, 'भविष्यति' सिद्ध भयो ।

**भविष्यतः-** भू लृट् 'भू+ल्' प्रथमपुरुष द्विवचन तस्, स्यप्रत्यय इट् आगम गुण, अव् आदेश, षत्व, रुत्व, विसर्ग भयो, 'भविष्यतः' सिद्ध भयो ।

**भविष्यन्ति-** भू लृट्, 'भू+ल्', 'भू+झि', 'भू+अन्ति', स्य, इट्, गुण, अव् आदेश, षत्व 'भविष्य+अन्ति', "अतो गुणे"ले पररूप 'भविष्यन्ति' सिद्ध भयो । यस्तै मध्यम पुरुषमा भविष्यसि, भविष्यथः, भविष्यथ, उत्तमपुरुषमा 'भविष्य+मि' भएपछि यञ् प्रत्याहार आदिमा हुने सार्वधातुकसंज्ञक प्रत्यय पर भएकोले "अतो दीर्घो यञि"ले "अलोऽन्त्यस्य" लगाएर भविष्यका अकारका स्थानमा दीर्घ भयो, 'भविष्यामि' वस्मा 'भविष्यावः' मस्मा 'भविष्यामः' यी रूप हुन्छन् ।

यहाँ ख्याल राख्ने कुरा- अनद्यतन भूतकाल बुझाउने 'श्वः', 'परश्वः', 'दिनद्वयानन्तरम्' जस्ता शब्द प्रयोग भएमा लुट् लकारका क्रियापद भविता, गन्ता आदि प्रयुक्त हुन्छन् । अन्यत्र सामान्य भविष्यत्मा लृट् लकारका क्रियापद भविष्यति, गमिष्यति आदि प्रयुक्त हुन्छन् ।

**लोट् चेति-** विधि आदि अर्थ बुझिंदामा धातुदेखि लोट् लकार होस् । विधि आदि अर्थ पछि आउने सूत्र "विधिनिमन्त्रणामन्त्रणाधीष्ट०"मा छन् विधि आदि अर्थको विवरण लकारार्थ प्रक्रियामा छ । विधि भनेको प्रेरणा अर्थात् आज्ञा दिनु नोकर कर्मचारी आदिलाई काममा लगाउनु हो । निमन्त्रण भनेको आवश्यक श्राद्ध भोजन आदिमा नाति (छोरीका छोरा) आदिलाई निम्ता गर्नु हो । दौहित्र पितृप्रिय हुने हुनाले श्राद्धमा नातिलाई (छोरीका छोरालाई) निम्ता गर्नु आवश्यक हुन्छ भन्ने कुरा यहाँ वृत्तिकारले सूचित गरेका छन् । निमन्त्रणामा जानु आवश्यक हुन्छ । आमन्त्रण भनेको भरसक आउनु होला भनेर अनुरोध गर्नु हो ।

---

७४ तुमुन् प्रत्ययको उदाहरण "पठितुं गच्छति" (पढ्न जान्छ) यहाँ गमनक्रिया वर्तमान कालिक छ भने पठनक्रिया भविष्यत्कालिक क्रिया छ र तुमुन्प्रत्यय भयो, तर भविष्यत्कालिक क्रिया निमित्तक अर्को भविष्यतकालिक क्रिया भएमा पनि त्यसदेखि तुमुन् प्रत्यय हुन्छ । जस्तै –पठितुं गमिष्यति (पढ्न जानेछ)

**४०९. आशिषि लिङ्लोटौ** ३ । ३। १७३ ॥

४१०. एरुः ३ ।४ । ८६ ॥

लोट इकारस्य उः । भवतु ॥

**४११. तुह्योस्तातङ्ङाशिष्यन्यतरस्याम्** ७ । १ । ३५ ॥

आशिषि तुह्योस्तातङ् वा । परत्वात्सर्वादेशः । भवतात् ॥

**४१२. लोटो लङ्वत्** ३ । ४ ।८५ ॥

लोटस्तामादयः सलोपश्च ॥

**४१३. तस्थस्थमिपां तान्तन्तामः** ३ । ४ । १०१ ॥

ङितश्चतुर्णां तामादयः क्रमात्स्युः ।

---

यसमा आमन्त्रित व्यक्ति न जान पनि सक्छ । अधीष्ट भनेको सत्कारपूर्ण अनुरोध हो जस्तै- 'हजुर, गुरुदेव, छोरालाई पढाइदिनु हुन अनुरोध गर्दछु ।' संप्रश्न भनेको सोधनी हो जस्तै 'गुरु देव, म कुन विषय पढूँ आज्ञा होस्' । प्रार्थना भनेको याचना हो । जस्तै- 'हजुर यहाँ वास पाइएला ?' यी अर्थमा लिङ् हुन्छ भने यिनै अर्थमा लोट् पनि हुन्छ भनेर "लोट् च" यो सूत्र पढिएको छ ।

**आशिषीति-** आशीर्वाद अर्थमा लिङ्, लोट् दुवै लकार होऊन् । अप्राप्त वस्तुको प्राप्तिको इच्छा आशीर्वाद हो ।

**तुह्योरिति-** आशीर्वाद अर्थमा विधान गरिएका तु र हिका स्थानमा तातङ् आदेश विकल्पले होस् ।

**भवतु-** विध्यादि अर्थमा भूधातुदेखि "लोट् च"ले लोट् लकार भयो, लकारका स्थानमा तिप् भएपछि लट्मा झैं शप्, गुण, अव् आदेश भएर 'भवति' भएपछि "एरुः"ले तिका इकारका स्थानमा उकार भयो, 'भवतु' सिद्ध भयो ।

**भवतु/भवतात्-** आशीर्वाद अर्थमा "आशिषि लिङ्लोटौ"ले लोट भयो, पूर्ववत् भवति भएपछि "एरुः"ले उत्व पनि भयो, तदनन्तर "तुह्योस्तातङ्०"ले तुका स्थानमा तातङ् भयो, ङकार र अकारको इत्संज्ञा लोप भयो, 'तात्' भयो, यहाँ परत्वात् "ङिच्च"लाई बाधेर "अनेकाल् शित्सर्वस्य"ले तु पूरैका स्थानमा तात् भयो, 'भवतात्' सिद्ध भयो, नभएका पक्षमा 'भवतु' भयो, यसरी यी दुई रूप सिद्ध भए । आशीर्वाद अर्थको लोट्मा खालि प्रथमपुरुष र मध्यमपुरुषको एकवचनमा वैकल्पिक तातङ् आदेश हुन्छ । अरू सबै विध्यादि अर्थको लोट् जस्तै हुन्छ ।

**विचारणीय-** अन्यत्र सबै ठाउँमा (अनङ्, अवङ् आदि आदेश गर्दा) अपवाद भएर "ङिच्च"ले "अनेकाल्शित्सर्वस्य"लाई बाध्दछ भने यहाँ "अनेकाल्शित्सर्वस्य"ले परत्वात् कसरी बाध्यो, परत्वात् "ङिच्च"लाई "अनेकाल् शित्सर्वस्य"ले बाध्ने हो भने "ङिच्च"को कहाँ अवकाश छ । यसो नभन्नु । जहाँ ङित् विधान गर्नको अरू केही काम छैन, त्यस्ता ठाउँमा अपवाद भएर "ङिच्च"ले अनेकाल्शित्ससर्वस्य"लाई बाध्दछ । यहाँ तातङ्मा ङित् विधानका गुणनिषेध आदि अरू काम छन् । अन्त्य अल्का स्थानमा विधान गर्न ङित्त्व पढिएको हैन, यसैले यहाँ "ङिच्च"ले "अनेकाल्शित्सर्वस्य"लाई बाध्दैन । "अनेकाल्शित्सर्वस्य"ले "ङिच्च"लाई बाध्दछ ।

**लोट इति-** लोट लकारको लङ् लकारमा जस्तै कार्य होस् । अर्थात् ताम् आदि आदेश होऊन् सकारको लोप पनि होस् ।

**तस्थस्थेति-** ङित् लकारसम्बन्धी तस्, थस्, थ र मिप्का स्थानमा ताम्, तम्, त, अम् आदेश क्रमैले होऊन् ।

---

भवताम् । भवन्तु ॥

**४१४. सेर्ह्यपिच्च ३ । ४ । ८७ ॥**

लोटः सेर्हिः सोऽपिच्च ॥

**४१५. अतो हेः ६ । ४ । १०५ ॥**

अतः परस्य हेर्लुक् । भव । भवतात् । भवतम् । भवत ॥

**४१६. मेर्निः ३ ।४ । ८९ ॥**

लोटो मेर्निः स्यात् ॥

---

**भवताम्-** भू धातुदेखि विध्यादि अर्थ एवं आशीर्वाद अर्थमा लोट् लकार भयो, लकारका स्थानमा प्रथमपुरुष द्विवचन तस् आयो, 'भू+तस्' भयो, "लोटो लङ्वत्"ले लोट् लकारको लङ्मा जस्तै कार्य होस् भनेकोले लङ् लकारमा हुने कार्य "तस्थस्थमिपां तान्तन्तामः"ले तस्का स्थानमा ताम् आदेश भयो, 'भू+ताम्' भयो, ताम्लाई सार्वधातुकसंज्ञा शप्प्रत्यय गुण, अव्आदेश भयो, 'भवताम्' सिद्ध भयो ।

**भवन्तु-** भू धातुदेखि विध्यादि र आशीर्वाद अर्थमा लोट् लकार भयो, भूल् वा लकारका स्थानमा प्रथमपुरुषको बहुवचन झि भयो, 'भू+झि' भयो, "झोऽन्तः"ले झिका स्थानमा अन्त् आदेश भयो, लट्मा जस्तै शप्, गुण, अव् आदेश भएर 'भवन्ति' भएपछि भवन्तिका इकारका स्थानमा "एरुः"ले उत्व भयो, 'भवन्तु' सिद्ध भयो ।

**सेर्हीति-** लोट् लकारका स्थानमा विधान गरिएको सिका स्थानमा हि आदेश होस्, त्यो अपित् पनि होस् ।

**अतो हेरिति-** ह्रस्व अकारान्त अङ्गदेखि पर रहेका हिको लुक् होस् । आशीर्वाद अर्थमा विधान गरिएको हिका स्थानमा "तुह्योस्तातङ्०"ले वैकल्पिक तातङ्आदेश हुने हुँदा विध्यादिलोट् र आशीर्लोट् छुट्टाछुट्टै विधान गर्नुपर्दछ ।

**भव-** भू धातुदेखि विध्यादि अर्थमा लोट् भयो, लकारका स्थानमा परस्मैपद मध्यमपुरुष एकवचन सि भयो, शप्, गुण, अव् आदेश भयो, 'भवसि' भयो, सिका स्थानमा "सेर्ह्यपिच्च"ले हि आदेश भयो, अकारान्त अङ्ग भवदेखि पर रहेको हुनाले हिको "अतो हेः"ले लुक् भयो, 'भव' सिद्ध भयो ।

**भवतात्/भव-** आशीर्वाद अर्थमा भू धातुदेखि लोट् भयो, लकारका स्थानमा परस्मैपद मध्यमपुरुष एकवचन सि भयो, शप्, गुण, अव् आदेश भयो, 'भवसि' भयो, सिका स्थानमा हि आदेश भयो, "अतो हेः"लाई बाधेर हिका स्थानमा "तुह्योस्तातङ्०"ले वैकल्पिक तातङ् भयो, अनेकालत्वात्, 'हि' पूरैका स्थानमा 'तात्' आदेश भयो, 'भवतात्' सिद्ध भयो । तातङ् नभएका पक्षमा हिको "अतो हेः"ले लुक् भयो, 'भव' सिद्ध भयो ।

**भवतम्-** भू धातुदेखि विध्यादि र आशीर्वाद दुवै अर्थमा लोट् भयो, लकारका स्थानमा परस्मैपद मध्यमपुरुष द्विवचन तस् भयो, "लोटो लङ्वत्"ले लङ्वद्भाव भयो र ङित् लकार जस्तै भयो, अनि "तस्थस्थमिपां०"ले थस्का स्थानमा तम् आदेश, शप्, गुण आदि भयो, 'भवतम्' सिद्ध भयो ।

**भवत-** भू धातुदेखि विध्यादि र आशीर्वाद दुवै अर्थमा लोट् भयो, लकारका स्थानमा मध्यमपुरुष बहुवचन 'थ' भयो, लङ्वद्भाव भएपछि "तस्थस्थमिपां०"ले थका स्थानमा त भयो, 'भू+त' भयो, शप्, गुण, अव् आदेश भयो, 'भवत' सिद्ध भयो ।

**मेर्निरिति-** लोट् लकारका स्थानमा विधान गरिएका मिका स्थानमा नि आदेश होस् ।

**४१७. आडुत्तमस्य पिच्च** ३ । ४ । ९२ ॥

लोडुत्तमस्याट् स्यात् स पिच्च । हिन्योरुत्वं न, इकारोच्चारणसामर्थ्यात् ॥

**४१८. ते प्राग्धातोः** १ । ४ । ८० ॥

ते गत्युपसर्गसंज्ञा धातोः प्रागेव प्रयोक्तव्याः ॥

**४१९. आनि लोट्** ८ । ४ । १६ ॥

उपसर्गस्थान्निमित्तात्परस्य लोडादेशस्यानीत्यस्य नस्य णः स्यात् । प्रभवाणि । **वा.**(दुरः षत्वणत्वयोरुपसर्गत्वप्रतिषेधो वक्तव्यः) । दुःस्थितिः । दुर्भवानि ।

---

**आडुत्तमेति**– लोट् लकारसम्बन्धी उत्तमपुरुषको आट् आगम होस् त्यो पित् पनि होस् । यहाँ मिप्को पित्व निमा आउँछ त्यसैको आगम आट्मा पनि पित्व स्वतः आउँछ । अतः मिप्मा पित्व विधानको फल छैन । वस्, मस्, इट्, वहि, महिमा पित्व ल्याउन पित्व विधान गरिएको हो ।

**भवानि**– भू धातुदेखि विध्यादि एवं आशीर्वाद अर्थमा लोट् भयो, लकारका स्थानमा उत्तमपुरुष एकवचन मि भयो, मिका स्थानमा "मेर्निः"ले नि भयो, निको "आडुत्तमस्य पिच्च"ले आट् आगम भयो, 'भू+आनि' भयो, शप् गुण अव्आदेश भयो, 'भवानि' सिद्ध भयो ।

**हिन्योरिति**– यहाँ हि र नि का स्थानमा "एरुः"ले उत्व हुँदैन, इकार उच्चारण गर्नका सामर्थ्यले । अर्थात् यदि उत्व अभीष्ट भए सूत्रमै "सेर्ह्वपिच्च", "मेर्नुः" यस्तो पढ्न सकिन्थ्यो, उत्व अभीष्ट नभएकोले 'हि', 'नि' विधान गरिएको हो, अतः उत्व हुँदैन भन्ने आशय हो ।

**ते प्रागिति**– ती गति र उपसर्ग-सञ्ज्ञकशब्दहरू धातुदेखि पूर्वपट्टि नै प्रयोग गर्नू (प्रयोग गर्न योग्य छन्)

**आनीति**– उपसर्गमा रहेका निमित्तदेखि पर रहेका लोट्का स्थानमा आदेश भएका आनि यसका नकारका स्थानमा णकार होस् ।

**प्रभवाणि**– भू धातुको लोट् उत्तमपुरुष एकवचनमा 'भवानि' रूप सिद्ध भयो, "ते प्राग्धातोः" यो सूत्रले पूर्वप्रयोग भयो, 'प्रभवानि' भयो, उपसर्गमा रहेको निमित्त प्रको रेफदेखि पररहेको लोट्का स्थानमा आदेश भएको आनिको नकार हुनाले "आनि लोट्"ले उक्त नकारका स्थानमा णकार भयो, 'प्रभवाणि' सिद्ध भयो । यहाँ णत्व गर्दा "अट्कुप्वाङ् नुम्व्यवायेऽपि"को फलितार्थ कथन गर्ने- "चु,टु,तु,ल,श,सव्यवाये न णत्वम्" यो परिभाषा स्मरणीय छ । चवर्ग आदिले व्यवधान भएमा णत्व हुँदैन । अतः 'प्रोच्छानि', 'प्रोज्झानि', 'प्रातानि', 'प्रवदानि' 'प्रादानि', 'प्राटानि' आदि स्थलमा णत्व हुँदैन ।

**(वा.) दुर इति**– दुर् शब्दको षत्व र णत्वको विषयमा उपसर्गसंज्ञाको निषेध होस् भन्नू ।

**दुःस्थितिः**– दुर् शब्दपूर्वमा हुने स्थाधातुदेखि क्तिन् प्रत्यय भएर 'दुर्स्थिति' शब्द बन्यो, 'दुर्+स्थिति' यहाँ दुर् शब्दलाई उपसर्गसंज्ञा हुनाले र स्थितिको सकार स्थाधातुको हुनाले "उपसर्गात्सुनोतिसुवति-स्यति-स्तौति-स्तोभति-स्था-सेनय०"ले उपसर्गस्थ निमित्त रेफदेखि पर हुनाले षत्व पाएकोमा "दुरः षत्वणत्वयोः०"ले उपसर्गसंज्ञा निषेध भएकोले षत्व भएन । रेफको विसर्ग भयो, 'दुःस्थितिः' सिद्ध भयो । षत्वको निमित्त इण् प्रत्याहार र कवर्ग हो । यहाँ दुर्को रेफ इण् प्रत्याहार निमित्त छ । दुःस्थितिः (दुर्भाग्य)

**दुर्भवानि**– दुर् शब्दपूर्वमा हुने भू धातुदेखि लोट् उत्तमपुरुषमा 'दुर्भवानि' सिद्ध भयो, दुर्भवानि यहाँ उपसर्गमा रहेको निमित्त दुर्को रेफदेखि पर रहेको भवानिमा आनिका नकारको "आनि लोट्"ले

**वा**. (अन्तश्शब्दस्याङ्किविधिणत्वेषूपसर्गत्वं वाच्यम्)। अन्तर्भवाणि ॥

**४२०. नित्यं ङितः ३ । ४ । १११ ॥**

सकारान्तस्य ङिदुत्तमस्य नित्यं लोपः । अलोऽन्त्यस्येति सलोपः । भवाव । भवाम ॥

---

णत्व पाएकोमा "दुरःषत्वणत्वयो:०"ले दुर्‌को उपसर्गत्व निषेध भयो, अब उपसर्गमा रहेको निमित्तदेखि पर नहुनाले णत्व भएन 'दुर्भवानि' यस्तै रह्यो । दुर्भवानि (दुष्ट बनौं ?)

**अन्तरिति**– अन्तर् शब्दको अङ्विधि, किविधि र णत्व गर्दामा उपसर्गसंज्ञा होस् भन्नू ।

**अन्तर्भवाणि**– अन्तर् शब्दपूर्वक भू धातुदेखि लोट्‌को उत्तमपुरुष एकवचनमा 'अन्तर्भवानि' रूप भयो । अन्तर शब्द (स्वरादि हुनाले) उपसर्ग नहुनाले "आनि लोट्"ले णत्व पाएको थिएन, "अन्तः शब्दस्य"ले अन्तर्‌को उपसर्गसंज्ञा भयो र उक्त सूत्र "आनि लोट्"ले णत्व भयो, 'अन्तर्भवाणि' सिद्ध भयो । अन्तर्भवाणि (लुकौं?)

अङ्‌मा= अन्तर्धा (अन्तर्धान, लुक्नु) किमा= अन्तर्धि (ढाक्नु, छोप्नु)

"अन्तर्धा व्यवधा पुंसि त्वन्तर्धिरपवारणम्" (अमरकोश)

**नित्यमिति**– सकार अन्तमा हुने ङित् लकारसंबन्धी उत्तमपुरुषको नित्य लोप होस् "अलोऽन्त्यस्य" भन्ने सूत्र लाएर सकारको लोप हुन्छ ।

**भवाव**– भू धातुदेखि विध्यादि एवं आशीः अर्थमा लोट् भयो, लकारका स्थानमा परस्मैपद उत्तमपुरुषको द्विवचन वस् आयो, शप्, गुण, अव् आदेश, आट् आगम, दीर्घ भएर, 'भवावस्' भयो, "लोटो लङ्‌वत्"ले लङ्‌वद्‌भाव भएपछि, "नित्यं ङितः"ले "अलोऽन्त्यस्य" लगाएर सकारको लोप भयो, 'भवाव' सिद्ध भयो । यहाँ लङ्‌वद्‌भाव र सकारको लोप शप् आदिभन्दा पहिले गरे पनि हुन्छ ।

**भवाम**– भू धातुदेखि विध्यादि र आशीः अर्थमा लोट् भयो, लकारका स्थानमा परस्मैपद उत्तमपुरुषको बहुवचन मस् भयो, शप्, गुण, अव्‌आदेश, अस्‌को आट्‌आगम, दीर्घ भएर 'भवामस्' भएपछि लङ्‌वद्‌भाव भयो, सकारको लोप भयो, 'भवाम' सिद्ध भयो ।

**विध्यादि अर्थमा लोट्‌का रूप-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र. | भवतु | भवताम् | भवन्तु |
| म. | भव | भवतम् | भवत |
| उ. | भवानि | भवाव | भवाम |

**आशीर्वाद अर्थमा लोट्‌का रूप-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र. | भवतु/भवतात् | भवताम् | भवन्तु |
| म. | भव/भवतात् | भवतम् | भवत |
| उ. | भवानि | भवाव | भवाम |

यसरी विध्यादि र आशीर्वाद अर्थमा फरक रूप भए पनि, तिप् र सिप्‌का मात्र आशीः अर्थमा भवतात् यो अधिक रूप हुनाले मूलमा मिश्रण गरेर लेखेको छ । मिश्रण गर्दा आशीर्वाद अर्थमा जो रूप देखाइए, दुवैका ती रूप हुन्छन् भन्ने कुरा साधन प्रक्रियामा नै स्पष्ट गरिएको छ ।

**४२१. अनद्यतने लङ् ३ । २ । १११ ॥**

अनद्यतनभूतार्थवृत्तेर्धातोर्लङ् स्यात् ॥

**४२२. लुङ्लङ्लृङ्क्ष्वडुदात्तः ६ । ४ । ७१ ॥**

एष्वङ्गस्याट् ॥

**४२३. इतश्च ३ । ४ । १०० ॥**

ङितो लस्य परस्मैपदमिकारान्तं यत्तदन्तस्य लोपः । अभवत् । अभवताम् । अभवन् । अभवः । अभवतम् । अभवत । अभवम् । अभवाव । अभवाम ॥

---

**अनद्यतने इति–** अनद्यतन भूतकालमा रहेको क्रियालाई कहने धातुदेखि लङ् होस् ।

**लुङ्लङ्लृङिति–** लुङ् लङ् लृङ् परभएमा अङ्गको उदात्त अट् आगम होस् ।

**इतश्चेति–** ङित् लकारसम्बन्धी इकारान्त जो परस्मैपद छ त्यसका अन्त्य अल्को लोप होस् ।

**अभवत्–** अनद्यतन भूतकालमा रहेको क्रियालाई कहने भू धातुदेखि "अनद्यतने लङ्"ले लङ् लकार भयो, "लुङ्लङ्लृङ्क्ष्वडुदात्तः"ले अट् आगम भयो, टित्त्वात् आदि पट्टि अ भयो, 'अभू+ल्' भयो, लकारका स्थानमा परस्मैपद प्रथमपुरुष एकवचन तिप् भयो, 'अभू+ति' भयो, पूर्ववत् शप् आदि भयो, 'अभवति' भयो, "इतश्च"ले तिका इकारको लोप भयो, 'अभवत्' सिद्ध भयो ।

**अभवतम्–** अनद्यतन भूत अर्थ बुझिंदामा भू धातुदेखि पूर्वसूत्रले लङ् भयो, अट् आगम भयो, 'अभू+ल्' भयो, लकारका स्थानमा प्रथमपुरुष द्विवचन तस्, शप्, गुण, अवादेश भयो, 'अभवतस्' भयो, "तस्थस्थमिपां०"ले तस्का स्थानमा ताम् भयो, 'अभवताम्' सिद्ध भयो ।

**अभवन्–** पूर्ववत् 'भू+लङ्', 'अभू+ल्' लकारका स्थानमा झि, झ्का स्थानमा अन्त् 'अभू+अन्ति' भएपछि शबादि भयो, 'अभवन्ति', तिका इकारको "इतश्च"ले लोप भयो, 'अभवन्त्' भयो, 'अभवन्त्'लाई पदसंज्ञा भयो, "संयोगान्तस्य लोपः"ले "अलोऽन्त्यस्य" लगाएर तकारको लोप भयो, 'अभवन्' सिद्ध भयो ।

**अभवः–** अनद्यतन भूत अर्थ बुझिंदामा भू धातुदेखि लङ् भयो, अट्आगम भयो, 'अभू+ल्' भयो, लकारका स्थानमा मध्यमपुरुष एकवचन सि भयो, शप् प्रत्यय आदि भएर 'अभवसि' भयो, सिका इकारको इतश्चले लोप भयो, 'अभवस्' पदसंज्ञा भएपछि, सकारको रुत्व, विसर्ग भयो, 'अभवः' सिद्ध भयो ।

**अभवतम्–** अनद्यतन भूत अर्थमा भूधातुदेखि लङ् अट्आगम 'अभू+ल्' लकारका स्थानमा मध्यमपुरुष द्विवचन थस् भयो, शबादि भयो, 'अभवथस्' थस्का स्थानमा "तस्थस्थमिपां०"ले तम् आदेश भयो, 'अभवतम्' सिद्ध भयो ।

**अभवत–** पूर्ववत् अर्थमा भू धातुदेखि लङ् अट्आगम भयो, 'अभू+ल्' लकारका स्थानमा मध्यमपुरुष बहुवचन थ भयो, शबादि भयो, 'अभवथ', थका स्थानमा "तस्थस्थमिपां०"ले त आदेश भयो, 'अभवत' सिद्ध भयो ।

**अभवम्–** पूर्ववत् अर्थमा भू धातुदेखि लङ् अट् उत्तमपुरुष एकवचन मि 'अभू+मि' शबादि, 'अभव+मि' भएपछि, "अतो दीर्घो०"लाई बाधेर "तस्थस्थमिपां०"ले मि का स्थानमा अम् भयो, 'अभव+अम्' "अमि पूर्वः"ले पूर्वरूप भयो, 'अभवम्' सिद्ध भयो ।

**अभवाव–** पूर्ववत् भू धातुदेखि लङ् अट्आगम उत्तमपुरुष द्विवचन वस् 'अभू+वस्' शप्, गुण, अव्आदेश "अतो दीर्घो यञि"ले दीर्घ भएपछि, 'अभवावस्' भयो, सकारको "नित्यं ङितः"ले लोप भयो, 'अभवाव' सिद्ध भयो ।

**अभवाम–** पूर्ववत् भू, लङ्, अडागम 'अभू+ल्', लकारका स्थानमा उत्तमपुरुष बहुवचन मस् शबादिकार्य "नित्यं ङितः"ले सकारको लोप भयो, 'अभवाम' सिद्ध भयो ।

**४२४. विधिनिमन्त्रणामन्त्रणाधीष्टसंप्रश्नप्रार्थनेषु लिङ् ३ । ३ । १६२ ॥**

एष्वर्थेषु धातोर्लिङ् ॥

**४२५. यासुट् परस्मैपदेषूदात्तो ङिच्च ३ । ४ । १०३ ॥**

लिङः परस्मैपदानां यासुडागमो ङिच्च ॥

**४२६. लिङः सलोपोऽनन्त्यस्य ७ । २ । ७९ ॥**

सार्वधातुकलिङोऽनन्त्यस्य सस्य लोपः । इति प्राप्ते

**४२७. अतो येयः ७ । २ । ८० ।**

अतः परस्य सार्वधातुकावयवस्य यास् इत्यस्य इय् । गुणः ॥

**४२८. लोपो व्योर्वलि ६ । १ । ६६ ॥**

भवेत् । भवेताम् ॥

---

**विधीति**– विधि, निमन्त्रण, आमन्त्रण, अधीष्ट, संप्रश्न, प्रार्थना, यति अर्थ बुझिँदामा धातुदेखि लिङ् लकार होस् ।

**यासुडिति**– लिङ्लकारसम्बन्धी परस्मैपदको यासुट् आगम होस् त्यो यासुट् उदात्त र ङित् पनि होस् ।

**लिङ इति**– सार्वधातुक लिङ्का अन्तमा नरहेका दन्त्यसकारको लोप होस् । यो सूत्रले लोप पाएमा-

**अत इति**– ह्रस्व अकारान्त अङ्गदेखि पर रहेको सार्वधातुकसंज्ञकप्रत्ययको अवयव यास्का स्थानमा इय् आदेश होस् । गुण भएपछि-

**लोप इति**– वल् प्रत्याहार पर भएमा वकार र यकारको लोप होस् ।

विध्यर्थक र आशीर्वादार्थक लोट् लकारमा तिप् र सिप्मा मात्र थोरै भिन्नता थियो । अतः सँगसँगै रूप निष्पन्न गरियो । यहाँ लिङ्लकारमा भने रूपहरू बिल्कुलै फरक पर्ने हुँदा (विधिलिङ् सम्बन्धी तिङ् सार्वधातुक र आशीर्लिङ् सम्बन्धी लिङ् आर्धधातुक हुने हुँदा) विधि लिङ् र आशीर्लिङ् अलग-अलग साधिन्छ ।

**भवेत्**– भू धातुदेखि विध्यादि अर्थ बुझिँदामा "विधिनिमन्त्रणाऽऽमन्त्रणाधीष्ट०"ले लिङ् लकार भयो, इकार र ङकारको इत्संज्ञा र लोप भयो, 'भू+ल्' भयो, लकारका स्थानमा प्रथमपुरुष एकवचन ति भयो, 'भू+ति' भयो, शप् प्रत्यय गुण अव् आदेश भयो, 'भव+ति' भयो, तिको "यासुट्परस्मैपदेषु०"ले यासुट् आगम उट्को अनुबन्ध लोप, यास् भयो, टित्त्वात् तिको आदिपट्टि भयो, 'भवयास्+ति' भयो, "लिङः सलोपो०"ले सकारको लोप पायो, त्यसलाई बाधेर "अतो येयः"ले यास्का स्थानमा इय् भयो, गुण भयो, 'भवेय्ति' भयो, यकारको "लोपो व्योर्वलि"ले लोप भयो, 'भवेति' भयो, तिका इकारको "इतश्च"ले लोप भयो, 'भवेत्' सिद्ध भयो ।

**भवेताम्**– भू धातुदेखि विध्यादि अर्थमा पूर्व सूत्रले लिङ् भयो, लकारका स्थानमा प्रथमपुरुषको द्विवचन तस् भयो, 'भू+तस्' शप् गुण अव्आदेश भयो, 'भव+तस्' भयो, तस्का स्थानमा "तस्थस्थमिपां०"ले ताम् आदेश भयो, 'भव+ताम्' यासुट् आगम, भव यास् ताम् "लिङः सलोपो"लाई बाधेर इय् आदेश 'भव+इय्+ताम्' गुण, 'भवेय्+ताम्' "लोपो व्योर्वलि"ले यकारको लोप, 'भवेताम्' सिद्ध भयो ।

**४२९. झेर्जुस् ३ । ४ । १०८**

लिङो झेर्जुस् स्यात् । भवेयुः । भवेः । भवेतम् । भवेत । भवेयम् । भवेव । भवेम ॥

**४३०. लिङाशिषि ३ । ४ । ११६**

आशिषि लिङस्तिङ् आर्धधातुकसंज्ञः स्यात् ॥

**४३१. किदाशिषि ३ । ४ । १०४ ॥**

आशिषि लिङो यासुट् कित् । स्कोः संयोगाद्योरिति सलोपः ।

**४३२. क्ङिति च १ । १ । ५ ॥**

गित्किन्ङिन्निमित्ते इग्लक्षणे गुणवृद्धी न स्तः । भूयात् ।

---

**झेरिति**– लिङ्लकारसम्बन्धी झिका स्थानमा जुस् होस् ।

**भवेयुः**– भू धातुदेखि विधिलिङ् अर्थमा लिङ् लकारका स्थानमा प्रथमपुरुष बहुवचन झि झिका स्थानमा "झोऽन्तः"लाई बाधेर "झेर्जुस्"ले जुस् भयो, 'भू+उस्', शप्, गुण, अव् आदेश 'भव+उस्' यासुट् आगम, इय् आदेश भएपछि 'भव+इय्+उस्' भयो, गुण, वर्णमेलन भयो, 'भवेयुस्' भयो । सकारको रुत्व, विसर्ग भयो, 'भवेयुः' सिद्ध भयो ।

**भवेः**– भू धातुदेखि विधिलिङ् लकारका स्थानमा मध्यमपुरुष एकवचन सिप्, 'भू+सि' शप् गुण, अव् आदेश भयो, 'भवसि' भयो, यासुट् आगम, इय् आदेश, 'भव+इय्' सि यलोप, गुण, 'भवेसि', सिका इकारको "इतश्च"ले लोप 'भवेस्' सकारको रुत्व, विसर्ग भयो, 'भवेः' सिद्ध भयो ।

**भवेतम्**– भू धातुदेखि विधिलिङ्, मध्यमपुरुष, द्विवचन थस्, शप् गुण, अव् आदेश 'भव+थस्' यासुट् आगम, इय्आदेश, गुण, 'भवेय्+थस्' यकारको लोप 'भवे+थस्' "तस्थस्थमिपां०"ले थस्का स्थानमा तम् आदेश, 'भवेतम्' सिद्ध भयो ।

**भवेत**– भू धातुदेखि विधिलिङ् लकारका स्थानमा मध्यमपुरुष बहुवचन थ 'भू+थ' शप् गुण, अव्आदेश 'भव+थ' यासुट् आगम, इय् आदेश, गुण, यलोप भयो, 'भवेथ', "तस्थस्थमिपां०"ले थका स्थानमा त आदेश, 'भवेत' सिद्ध भयो ।

**भवेयम्**– भू धातुदेखि विधिलिङ् उत्तमपुरुष एकवचन मिप्, शप्, गुण अव् आदेश 'भव+मि' यासुट् आगम, इय् आदेश "तस्थस्थमिपां०"ले मिका स्थानमा अम्, 'भवेय्+अम्', 'भवेयम्' सिद्ध भयो ।

**भवेव**– भूधातुदेखि विधिलिङ् लकारका स्थानमा उत्तमपुरुष द्विवचन वस्, शप्, गुण, अव्आदेश, 'भव+वस्' यासुट् आगम, इय् आदेश 'भव+इय्+वस्' गुण, यलोप 'भवेवस्' "नित्यं ङितः"ले सकारको लोप भयो, 'भवेव' सिद्ध भयो ।

**भवेम**–भू धातुदेखि विधिलिङ् लकारका स्थानमा उत्तमपुरुष बहुवचन मस् 'भू+मस्' शप्, गुण, अव् आदेश 'भव+मस्' यासुट् आगम, इय् आदेश, गुण, यलोप, 'भवेमस्', सलोप भएपछि 'भवेम' सिद्ध भयो ।

**लिङिति**– आशीर्वाद अर्थमा विधान गरिएको लिङ्लकारसम्बन्धी तिङ् आर्धधातुकसंज्ञक होस् ।

**किदिति**– आशीर्वाद अर्थमा विधान गरिएको यासुट् कित् होस् ।

**स्कोरिति**– "स्कोः संयोगाद्योरन्ते च"ले सकारको लोप हुन्छ ।

**क्ङितिचेति**– गित् कित् र ङित् प्रत्यय निमित्त भएमा इक्का स्थानमा हुने गुण र वृद्धि नहोऊन् ।

**भूयात्**– भू धातुदेखि आशीर्वाद अर्थ बुझिंदामा "आशिषि लिङ्लोटौ"ले लिङ् भयो, लकारका स्थानमा ति भयो, तिलाई "लिङाशिषि"ले आर्धधातुक संज्ञा भयो, "यासुट् परस्मैपदे"ले यासुडागम भयो, "किदाशिषि"ले यासुट् कित् पनि भयो, 'भू+यास्+ति' यासुट् आगम आर्धधातुक तिको अवयव

भूयास्ताम् । भूयासुः । भूयाः । भूयास्तम् । भूयास्त । भूयासम् । भूयास्व । भूयास्म ॥

**४३३. लुङ् ३ । २ । ११० ॥**

भूतार्थे धातोर्लुङ् स्यात् ॥

**४३४. माङि लुङ् ३ । ३ । १७५ ॥**

सर्वलकारापवादः ॥

**४३५. स्मोत्तरे लङ् च ३ । ३ । १७६ ॥**

स्मोत्तरे माङि लङ् स्याच्चाल्लुङ् ॥

---

हुनाले आर्धधातुक नै हुँदा "लिङः सलोपो०"ले लोप पनि पाएन । इय् आदेश पनि पाएन, 'भू+यास्+ति' यहाँ भूका उकारका स्थानमा "सार्वधातुकार्धधातुकयोः"ले गुण पाएको "क्ङिति च"ले कित् प्रत्यय यासुट् पर हुनाले निषेध भयो, तिका इकारको "इतश्च"ले लोप भयो, 'भूयास्त्' भयो, यहाँ "स्कोःसंयोगाद्योः०"ले सकारको लोप भयो, 'भूयात्' सिद्ध भयो । यहाँ यासुट् ङित् छँदै छ, सूत्रमा नै ङिच्च भनिएको छ ङित् भएपछि गुण निषेध भैहाल्छ । फेरि त्यही यासुट्लाई कित् किन गर्नुपर्‍यो भन्ने शङ्कामा सुप्यात्, इज्यात् इत्यादिमा "वचिस्वपियजादीनां किति"ले सम्प्रसारण गर्नको निमित्त हो । कित् नभनेको भए त्यहाँ सम्प्रसारण भएर 'इज्यात्' हुने थिएन ।

**भूयास्ताम्**– भू धातुदेखि पूर्ववत् आशीर्लिङ् प्रथमपुरुष द्विवचन 'भू+तस्' यहाँ तस्लाई लिङाशिषिले आर्धधातुक संज्ञा, यासुट् आगम, त्यसको किदाशिषिले कित्त्व, "क्ङिति च"ले गुणनिषेध भएपछि, 'भूयास्तस्' भयो, तस्का स्थानमा "तस्थस्थमिपां०"ले 'ताम्' भयो, 'भूयास्ताम्' सिद्ध भयो ।

**भूयासुः**– भू धातुदेखि आशीर्लिङ् प्रथमपुरुष बहुवचन झि, "झेर्जुस्"ले झिका स्थानमा जुस् आदेश, यासुट्आगम, कित्व 'भू+यास्+उस्' यहाँ गुणनिषेध, वर्णमेलन, रुत्व, विसर्ग, 'भूयासुः' सिद्ध भयो ।

**भूयाः**– भू धातुदेखि पूर्ववत् आशीर्लिङ मध्यमपुरुष एकवचन 'भू+यास्+सि' यहाँ गुणनिषेध, सिका इकारको "इतश्च"ले लोप, संयोगादिसकारको लोप, 'भूयास्' सकारको रुत्व, विसर्ग, 'भूयाः' सिद्ध भयो ।

**भूयास्तम्**– भू धातुदेखि पूर्ववत् मध्यमपुरुष द्विवचन 'भू+यास्+थस्' यहाँ गुणनिषेध, "तस्थस्थमिपां०"ले थस्का स्थानमा तम् आदेश भयो, 'भूयास्तम्' सिद्ध भयो ।

**भूयास्त**–भू धातुदेखि पूर्ववत् बहुवचन 'भू+यास्+थ' यहाँ गुणनिषेध, "तस्थस्थमिपां०"ले थका स्थानमा त, आदेश, 'भूयास्त' सिद्ध भयो ।

**भूयासम्**–भू धातुदेखि पूर्ववत् उत्तमपुरुष एकवचन 'भू+यास्+मि' यहाँ गुणनिषेध, "तस्थस्थमिपां०"ले मिप्का स्थानमा अम् आदेश, 'भूयासम्' सिद्ध भयो ।

**भूयास्व**–भू धातुदेखि पूर्ववत् उत्तमपुरुष द्विवचन 'भू+यास्+वस्' यहाँ गुणनिषेध, "नित्यं ङितः"ले सकारको लोप भयो, 'भूयास्व' सिद्ध भयो ।

**भूयास्मं**–भू धातुदेखि पूर्ववत् उत्तमपुरुष बहुवचन 'भू+यास्+मस्', यहाँ गुणनिषेध, नित्यं ङितःले सलोप 'भूयास्म' सिद्ध भयो ।

**लुङिति**– भूत अर्थमा रहेको कियालाई कहने धातुदेखि लुङ् लकार होस् ।

**माङीति**– माङ् शब्द उपपद भएमा धातुदेखि लुङ् लकार होस् ।

**सर्वेति**– यो सबै लकारको अपवाद हो । अर्थात् माङ्को योगमा सबै लकारलाई बाधेर "माङि लुङ"ले लुङ् हुन्छ ।

**स्मोत्तर इति**– स्म शब्द उत्तरपद हुने माङ् शब्द उपपद भएमा लङ् होस्, लुङ् पनि होस् ।

---

**४३६. च्लि लुङि ३ । १ । ४३ ॥**
शबाद्यपवादः ॥
**४३७. च्लेः सिच् ३ । १ । ४४ ॥**
इचावितौ ॥
**४३८. गातिस्थाघुपाभूभ्यः सिचः परस्मैपदेषु २ । ४ । ७७ ॥**
एभ्यः सिचो लुक् स्यात् । गापाविहेणादेशपिबती गृह्येते ॥
**४३९. भूसुवोस्तिङि ७ । ३ । ८८ ॥**
भू सू एतयोः सार्वधातुके तिङि परे गुणो न । अभूत् । अभूताम् । अभूवन् ।

---

**च्लीति**– लुङ् लकार परभएमा धातुदेखि च्लिप्रत्यय होस् । यो च्लिप्रत्यय शप् आदि प्रत्ययको अपवाद हो ।

**च्लेः सिच्**– च्लिका स्थानमा सिच् आदेश होस् । इ र च् इत्संज्ञक हुन्छन् ।

**गातिस्थेति**– गा धातु, स्था धातु, घुसंज्ञक धातु, पा धातु र भू धातुदेखि पररहेका सिच्को लुक् होस्, परस्मैपद परभएमा ।

**गापाविति**– यहाँ इण्का स्थानमा आदेश हुने गा धातु, पिवति रूप हुने पा धातु लिइन्छन् ।

**भूसुवोरिति**– भू, सू, यी दुई धातुको सार्वधातुकसंज्ञक तिङ् पर भएमा गुण नहोस् ।

मा माङ् यी दुवै शब्द चादिगणमा छन् माङ् ङित् हो, ङकारको इत्संज्ञा लोप भएपछि मा हुन्छ । अर्को केवल मा हो । यी दुई उस्तै भए पनि ङित् 'मा' शब्दका योगमा मात्र ''माङि लुङ्'', ''स्मोत्तरे लङ् च'' यी दुई सूत्र लाग्छन् अङित् 'मा' शब्दका योगमा लाग्दैनन् ।

यहाँ पहिले निरुपपद भू धातुको लुङ् लकारको साधनप्रकिया र पछिवाट मा र मा स्म उपपद भएका लुङ् लकारको साधनप्रक्रिया क्रमशः (संक्षिप्त रूपमा) देखाइन्छ ।

**अभूत्**– भूतार्थक्रियावाचक भू धातुदेखि "लुङ्"ले 'लुङ्' भयो, उङ्को इत्संज्ञा लोप भयो, 'भू+ल्' भयो, "लुङ्लङ्लृङ्क्ष्वडुदात्तः"ले अट्आगम भयो, 'अभू+ल्' भयो, लकारका स्थानमा प्रथमपुरुष एकवचन तिप् भयो, 'अभू+ति' भयो, तिलाई सार्वधातुकसंज्ञा भयो, "कर्तरि शप्"ले शप् पायो, त्यसलाई बाधेर "च्लि लुङि"ले च्लि प्रत्यय भयो, "च्लेः सिच्"ले च्लिका स्थानमा सिच् भयो, इकार र चकारको इत्संज्ञा भयो, 'अभू+स्+ति'भयो, "गातिस्था०"ले सिच्को लुक् भयो, 'अभू+ति', भूका ऊकारका स्थानमा "सार्वधातुका०"ले गुण पाएकोमा "भूसुवोस्तिङि"ले निषेध भयो, तिका इकारको "इतश्च"ले लोप भयो, 'अभूत्' सिद्ध भयो ।

**अभूताम्**– भू धातुदेखि लुङ् पूर्ववत् 'अभू+ल्', 'अ+भू+तस्', च्लि, सिच्, 'अभू+स्+तस्' सिच्लुक्, 'अभू+तस्' गुणनिषेध, तस्का स्थानमा ताम्, 'अभूताम्' सिद्ध भयो ।

**अभूवन्**– भू धातुदेखि लुङ् अट् आगम झि, 'अ+भू+झि', शप्लाई बाधेर च्लि, सिच्, लुक् झका स्थानमा अन्त आदेश[७५] 'अभू+अन्ति', "भुवो वुक्०"ले वुक् आगम 'अभूव्+अन्ति', 'अभूवन्ति', तिका इकारको इतश्चले लोप, तकारको संयोगान्तलोप, 'अभूवन्', सिद्ध भयो ।

---

७५ यहाँ सिच्को लुक् भएपछि पनि स्थानिवद्भाव भएर "सिजभ्यस्तविदिभ्यश्च" ले जुस् पाउँछ र "आतः" यो नियमसूत्रद्वारा जुस् निषेध हुन्छ भन्ने कुरा स्मरण गराउन प्रक्रियामा सिच्को लुक् गरिसकेपछि अन्तादेश गरिएको हो ।

अभूः । अभूतम् । अभूत । अभूवम् । अभूव । अभूम ॥

**४४०. न माङ्योगे ६ । ४ । ७४ ॥**

अडाटौ न स्तः । मा भवान् भूत् । मा स्म भवत् ।

---

**अभूः**– भू धातुदेखि लुङ्, अट्, सिप्, च्लि, सिच्, लुक्, भूका ऊकारको गुणनिषेध, सिका इकारको लोप, रुत्व, विसर्ग, 'अभूः' सिद्ध भयो ।

**अभूतम्**– भू धातुदेखि लुङ्, अट्, थस्, च्लि, सिच्, लुक्, भूका ऊकारको गुणनिषेध थस्‌का स्थानमा तम् आदेश भयो, 'अभूतम्', सिद्ध भयो ।

**अभूत**– भू लुङ्, अट्, अभू+ल्, थ, च्लि, सिच्, लुक्, गुणनिषेध, थका स्थानमा त आदेश भयो, 'अभूत' सिद्ध भयो ।

**अभूवम्**– भू धातुदेखि लुङ्, अट् आगम, लकारका स्थानमा मिप्, च्लि, सिच्, लुक् गुणनिषेध, मिका स्थानमा अम्, वुक् आगम भयो, 'अभूवम्' सिद्ध भयो ।

**अभूव**– भू धातुदेखि लुङ् अडागम, अभू ल् लकारका स्थानमा वस् पूर्ववत् च्लि, सिच्, लुक्, गुणनिषेध भयो, अभूवस् "नित्य ङितः"ले सकारको लोप, 'अभूव' सिद्ध भयो ।

**अभूम**– भू धातुदेखि लुङ् पूर्ववत् 'अभू+मस्', गुणनिषेध, "नित्य ङितः"ले सकारको लोप भयो, 'अभूम' सिद्ध भयो ।

**न माङिति**– माङ् शब्दको योग भएमा अट् आगम र आट् आगम न होऊन् ।

**मा (भवान्) भूत्**– माङ् शब्द अर्थात् 'मा' उपपद हुने भूधातुदेखि,"माङि लुङ्"ले लुङ् लकार भयो, 'मा+भू+ल्' भयो, "लुङ्लङ्लृङ्क्ष्वडुदात्तः"ले अट्आगम पाएकोमा "न माङ्योगे"ले निषेध भयो, पूर्ववत् सबै प्रक्रिया भयो, 'मा+भूत्' सिद्ध भयो । यस्तै अरू रूप पनि सिद्ध गर्नू । क्रियापददेखि पूर्वमा कर्ता भवत् शब्दको प्रयोग भयो, 'मा भवान् भूत्' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध गर्नु । सबै रूप तल दिइन्छ –

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथम पुरुष | मा भूत् | मा भूताम् | मा भूवन् |
| मध्यमपुरुष | मा भूः | मा भूतम् | मा भूत |
| उत्तमपुरुष | भा भूवम् | मा भूव | मा भूम |

**मा स्म भवत्**– मा स्म शब्द उपपद हुने भू धातुदेखि "स्मोत्तरे लङ् च" ले लङ् भयो, 'मा स्म भू+ल्' भयो, "लुङ्लङ्लृङ्क्ष्वडुदात्तः"ले पाएको अट् आगम "न माङ्योगे"ले निषेध भयो, लकारका स्थानमा ति भयो, 'मा स्म भू+ति' भयो, शबादि भयो, 'मा स्म+भवति' तिका इकारको इतश्चले लोप भयो, 'मा स्म भवत्' सिद्ध भयो ।

तस् आदिमा पनि पूर्ववत् लङ्मा झैं सबै कार्य भएर रूप बन्दछन् । खालि अट् आगमको निषेध हुन्छ । यत्तिमात्र फरक छ । यसका रूप–

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | मास्म भवत् | मा स्म भवताम् | मास्म भवन् |
| मध्यमपुरुष | मा स्म भवः | मा स्म भवतम् | मा स्म भवत |
| उत्तमपुरुष | मा स्म भवम् | मा स्म भवाव | मा स्म भवाम |

मा स्म भूत् ।

**४४१. लिङ्निमित्ते लृङ् क्रियातिपत्तौ ३ । ३ । १३९ ॥**

हेतुहेतुमद्भावादि लिङ्निमित्तं तत्र भविष्यत्यर्थे लृङ् स्यात् क्रियाया अनिष्पत्तौ गम्यमानायाम् । अभविष्यत् । अभविष्यताम् । अभविष्यन् ।

---

**मा स्म भूत्**– मा स्मशब्द उपपद हुने भूधातुमा मा स्म भूदेखि "स्मोत्तरे लङ् च"ले लुङ् भयो, "लुङ्लङ्लृङ्क्षु०"ले अडागम पाएकोमा "न माङ्योगे"ले निषेध भयो, 'मा स्म भू+ल्' लकारका स्थानमा ति 'मास्म भू+ति' भएपछि च्लि प्रत्यय सिच् आदेश आदि पूर्वोक्त लुङ् लकारका कार्य भए 'मा स्म भूत्' सिद्ध भयो ।

तस् आदिमा पनि 'मास्म भू+ल्' भएर अट् आगमको निषेध भएपछि पूर्वोक्त लुङ्का कार्य हुन्छन् र रूप सिद्ध हुन्छन् । यसका रूप–

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | मा स्म भूत् | मास्म भूताम् | मा स्म भूवन् |
| मध्यमपुरुष | मा स्म भूः | मा स्म भूतम् | मा स्म भूत |
| उत्तमपुरुष | मा स्म भूवम् | मा स्म भूव | मा स्म भूम |

**लिङ्निमित्त इति**– हेतु र हेतुमद्भाव आदि लिङ्का निमित्त छन्, त्यही हेतु र हेतुमद्भाव आदि अर्थमा भविष्यत् कालमा रहेको क्रियालाई कहने धातुदेखि लृङ् लकार होस् क्रियाको अनिष्पत्ति बुझिन्छ भने ।

हेतुहेतुमद्भाव अर्थमा हेतु "हेतुमतोर्लिङ्"ले लिङ् हुँदा 'कृष्णं नमेच्चेत् सुखं यायात्' यो उदाहरण लकारार्थमा दिइएको छ । यसको अर्थ हो कृष्णलाई नमस्कार गर्‍यो भने सुख पाउला । यहाँ सुखप्राप्ति क्रिया सहेतुक छ, नमस्कार क्रिया त्यसको हेतु छ । अतः हेतु नमनक्रियाबोधक नम् धातु को सुखप्रापणक्रियाबोधक 'या' धातु हेतुमान् छ । यी दुवै धातुदेखि लिङ् लकार भएको छ । त्यही हेतुहेतुमद्भाव अर्थमा भविष्यत्काल र क्रियाको अनिष्पत्ति बुझिन्छ भने हेतु र हेतुमान् क्रिया बुझाउने दुवै धातुदेखि लृङ् हुन्छ । जस्तै– 'कृष्णमनंस्यच्चेत् सुखमयास्यत्' (यदि कृष्णलाई नमस्कार गर्ला तब सुख पाउला ।) तर यहाँ वक्ताको अभिप्राय 'यसले कृष्णको नमस्कार पनि गर्ने छैन', सुख पनि पाउने छैन, यस्तो छ ।

त्यस्तै- यहाँ "सुवृष्टिश्चेदभविष्यत् तदा सुभिक्षमभविष्यत्" (सुवृष्टि होला त सहकाल होला) तर सुवृष्टि हुने छैन, सहकाल पनि हुने छैन, यो वक्ताको अभिप्राय छ । तब यो लृङ् लकारको उदाहरण बनेको छ । यो भविष्यज्ञाता दैवज्ञले शकुन हेरेर भनिएको वाक्य हो ।

**अभविष्यत्**– हेतुहतुमद्भाव अर्थमा क्रियाको अनिष्पत्ति बुझिँदामा भूधातुदेखि "लिङ्निमित्ते०"ले लृङ् भयो, 'भू+ल्' भयो, अट् आगम 'अभू+ल्' लकारका स्थानमा तिप्, शप्लाई बाधेर "स्यतासी०"ले स्यप्रत्यय, इट्, गुण, अव् आदेश, षत्व भएपछि 'अभविष्यति' भयो, तिका इकारको "इतश्च" ले लोप भयो, 'अभविष्यत्' सिद्ध भयो ।

**अभविष्यताम्**- भू लृङ्, अट् लकारका स्थानमा तस्, स्य प्रत्यय, इट्, गुण, अव् आदेश, षत्व, तस्का स्थानमा ताम् भयो, 'अभविष्यताम्' सिद्ध भयो ।

**अभविष्यन्**- भू लृङ्, अट्, लकारका स्थानमा झि, अन्त् आदेश, स्य प्रत्यय, इट्, गुण, अव् आदेश, षत्व, इकारलोप, संयोगान्तलोप भयो, 'अभविष्यन्' सिद्ध भयो ।

---

अभविष्यः । अभविष्यतम् । अभविष्यत । अभविष्यम् । अभविष्याव । अभविष्याम । सुवृष्टिश्चेदभविष्यत्तदा सुभिक्षमभविष्यत्, इत्यादि ज्ञेयम् ॥

---

**अभविष्यः**- भू लृङ्, अट्, सिप्, स्य प्रत्यय, इट्, गुण, अव् आदेश, 'अभविष्य+सि' यहाँ सिका इकारको लोप, रुत्व, विसर्ग भयो, 'अभविष्यः' सिद्ध भयो ।

**अभविष्यतम्**-भू लृङ्, अट्, मध्यमपुरुष द्विवचन थस्, स्य प्रत्यय, इट् आगम, भूको ऊकारका स्थानमा गुण, अव् आदेश, षत्व, 'अभविष्य+थस्', थस्का स्थानमा तम् 'अभविष्यतम्' सिद्ध भयो ।

**अभविष्यत**- भू लृङ्, अट्, थ, स्य प्रत्यय, इट्, गुण, अव् आदेश, षत्व, थका स्थानमा त 'अभविष्यत' सिद्ध भयो ।

**अभविष्यम्**- भू लृङ्, अट्, उत्तमपुरुष एकवचन मिप्, पूर्ववत् स्य प्रत्यय आदि, प्रक्रिया भएर 'अभविष्य+मि' भयो, मिका स्थानमा अम्, "अमि पूर्वः"ले पूर्व रूप भयो, 'अभविष्यम्' सिद्ध भयो ।

**अभविष्याव**- भू लृङ्, अट्, लकारका स्थानमा वस् आदेश स्य प्रत्यय, इट्, गुण, अव् आदेश षत्व, 'अभविष्य+वस्' भएपछि, "अतो दीर्घो यञि"ले दीर्घ, सकारको "नित्यं ङितः"ले लोप भयो, 'अभविष्याव' सिद्ध भयो ।

**अभविष्याम**- भू लृङ्, अट्, उत्तमपुरुष बहुवचन मस्, स्य प्रत्यय आदि र दीर्घ, पूर्ववत् भयो, 'अभविष्यामस्' सकारको "नित्यं ङितः"ले लोप भयो, 'अभविष्याम' सिद्ध भयो ।

**सुवृष्टिश्चेदिति**- सुवृष्टि भयो भने सहकाल होला इत्यादि जान्नू । यहाँ सुवृष्टि हुनु रूप क्रियाबोधक भूधातु हेतु र सहकाल हुनु रूप क्रियाबोधक भूधातु हेतुमान् छन् । दुवै ठाउँमा क्रियाको अनिष्पत्ति बुझिँदा भूधातुदेखि लृङ् भयो, 'भू+ल्' भयो, अडागम भयो, 'अभू+ल्' भयो, दुवैको लकारका स्थानमा प्रथम पुरुषको एकवचन ति भएपछि पूर्ववत् स्य प्रत्यय इट् आगम आदि क्रिया भएपछि दुवै ठाउँमा 'अभविष्यत्' रूप सिद्ध भयो, हेतु हेतुमद्भाव बुझाउन हेतुबोधक क्रियापददेखि पूर्व 'सुवृष्टिश्चेत्' यी दुई पद राखियो, हेतुमान् क्रियापददेखि पूर्वतर्फ 'सुभिक्षम्' पद राखियो तब 'सुवृष्टिश्चेदभविष्यत्तदा सुभिक्षमविष्यत्' यो वाक्य बन्यो र हेतुहेतुभद्भाव अर्थ स्पष्ट भयो ।

यहाँ यथास्थान हेतुहेतुमद्भाव बुझिने गरी यसरी वाक्य निर्माण गर्दा निर्मित वाक्यको अर्थमा उही धातु दोहोरिन पनि सक्छ । अलग अलग दुई धातु पनि हुन सक्छन् । दुवैदेखि लृङ् लकार हुन्छ । क्रियाको अनिष्पत्ति गम्यमान हुनुपर्छ ।

यसरी विस्तारपूर्वक पहिलो भू धातुको रूपसिद्धि प्रक्रिया उल्लेख गरियो । रूपसिद्धि गर्दा यहाँ सूत्रहरूको पौर्वापर्यविवेक माथि देखाइए जस्तै अन्यत्र पनि जान्नुपर्दछ । जस्तै अट् आगम गर्नुपर्ने ठाउँमा (लङ्, लृङ्, लुङ्मा) 'भू+ल्' भएपछि अट् आगम गरिहाल्नु पर्छ । त्यसपछि तिबादि आदेश गर्नुपर्छ । अन्यत्र लकार गरेपछि तिबादि आदेश गर्नुपर्छ । बीचमा झि आदिका स्थानमा अन्ति, ताम्, तम्, त, अम् आदि आदेश गर्नु पर्छ । ति सिका इकारको लोप र वस् मस्का सकारको लोप सबभन्दापछि गरेमा पनि फरक पर्दैन । षत्व, णत्व, रुत्व, विसर्ग त्रिपादी सूत्रको कार्य भएकोले सबभन्दा पछाडि गर्नुपर्छ । अर्थात् सपादी कार्य पहिले र पछि त्रिपादीको कार्य गर्नुपर्छ । त्रिपादीमा पनि परशास्त्रको कार्यभन्दा पहिले पूर्वकार्य गर्नुपर्छ । सपादीमा भने पर कार्य पहिले गर्नुपर्छ । "पूर्वत्रासिद्धम्" र "विप्रतिषेधे०" यी दुई सूत्रको नियम सर्वत्र लागू हुन्छ । अन्तरङ्ग, अपवाद आदि कार्य यी दुई सूत्रको नियमलाई पनि बाध्दछन् । यी कुराहरू सुबन्त तिङन्त आदि सबै प्रक्रियामा लाग्छन् ।

धातुका अनेकअर्थ हुन्छन् उपसर्गको योगले धातुको अर्थ बदलिन्छ यहाँ भू धातुको हुनु

अर्थ छ, तर विभिन्न उपसर्ग लाग्दा यसको विभिन्न अर्थ हुन्छ । जस्तै–

प्रभवति (समर्थ हुन्छ ।) पराभवति (तिरस्कार गर्छ ।)

संभवति (सम्भव छ ।) अनुभवति (अनुभव गर्छ ।)

विभवति (समर्थ हुन्छ ।) उद्भवति (उत्पन्न हुन्छ ।)

अभिभवति (दबाउँछ ।) परिभवति (तिरस्कार गर्छ ।)

प्रादुस्, आविस्, अन्तर्शब्द उपसर्ग हैनन्, तर यिनी धातुको अगाडि रहन्छन् । यी शब्द धातुको अगाडि लाग्दा पनि भूधातुको अर्थ फरक हुन्छ । जस्तै-

प्रादुर्भवति (प्रकट हुन्छ), आविर्भवति (प्रकट हुन्छ),अन्तर्भवति (भित्र पर्छ), अन्तर्भूत हुन्छ ।)

माथि लट् लकारको वाक्यमा क्रियापदको प्रयोग दर्शाइएको छ । लिट् लुट् लट् आदि लकारमा पनि त्यस्तै किसिमले प्रयोग गर्नुपर्छ । जस्तैः लिट्मा-

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र.पु. | स बभूव (त्यो भयो रे) | तौ बभूवतुः (ती दुई भए रे) | ते बभूवुः (तिनीहरू भए रे) |
| म.पु | त्वं बभूविथ (तिमी भयौ रे) | युवां बभूवथुः (तिमी दुई भयौ रे) | यूयं बभूव (तिमीहरू भयौ रे) |
| उ.पु | अहं बभूव (म भएँ रे) | आवां बभूविव (हामी दुई भयौं रे) | वयं बभूविम (हामीहरू भयौं रे) |

**लुट्-**

| | | | |
|---|---|---|---|
| प्र.पु. | स भविता (त्यो हुनेछ) | तौ भवितारौ (ती दुई हुनेछन्) | ते भवितारः (तिनीहरू हुनेछन्) |
| म.पु. | त्वं भवितासि (तिमी हुनेछौं) | युवां भवितास्थः (तिमी दुई हुनेछौं) | यूयं भवितास्थ (तिमीहरू हुनेछौं) |
| उ.पु. | अहं भवितास्मि (म हुनेछु) | आवां भवितास्वः (हामी दुई हुनेछौं) | वयं भवितास्मः (हामीहरू हुनेछौं) |

**लृट्-**

| | | | |
|---|---|---|---|
| प्र.पु. | स भविष्यति (त्यो हुनेछ) | तौ भविष्यतः (ती दुई हुनेछन्) | ते भविष्यन्ति (तिनीहरू हुनेछन्) |
| म.पु. | त्वं भविष्यसि (तिमी हुनेछौ) | युवां भविष्यथः (तिमी दुई हुनेछौ) | यूयं भविष्यथ (तिमीहरू हुनेछौ) |
| उ.पु. | अहं भविष्यामि (म हुनेछु) | आवां भविष्यावः (हामी दुई हुनेछौ) | वयं भविष्यामः (हामीहरू हुनेछौ) |

यसैगरी लोट्, लिङ्, लङ्, लुङ, लृङ्मा पनि ऊह गर्नुपर्छ ।

**सार्वधातुक लकार र आर्धधातुक लकार-**

लट्, विध्यादि अर्थको लोट् र लिङ्, अनि लङ् यी सार्वधातुक लकार हुन् । अरू आर्धधातक लकार हुन् ।

विभिन्न सार्वधातुक लकारका परिनिष्ठित रूपमा तिप् आदि नौ विभक्तिका स्वरूप (भ्वादि, दिवादि, तुदादि र चुरादिमा) निम्न लिखित अनुसार हुन्छन्-

| | | | |
|---|---|---|---|
| **लट्मा** | ति. | तः | अन्ति |
| | सि. | थः | थ |
| | मि. | व. | मः |
| **लङ्मा** | त् | ताम् | अन् |
| | स् | तम् | त |
| | अम् | व | म |

अत सातत्यगमने ॥ २ ॥

| | | | |
|---|---|---|---|
| **लोट्मा** | तु/तात् | ताम् | अन्तु |
| | हि/तात् | तम् | त |
| | आनि | आव | आम |
| **विधिलिङ्मा** | इत् | इताम् | इयु: |
| | इ: | इतम् | इत |
| | इयम् | इव | इम |
| **आर्धधातुक लकारमा–** | | | |
| **लिट्मा** | अ | अतु: | उ: |
| | थ | अथु: | अ |
| | अ | व | म |
| **लुट्मा** | ता | तारौ | तार: |
| | तासि | तास्थ: | तास्थ |
| | तास्मि | तास्व: | तास्म: |
| **लृट्मा** | स्यति | स्यत: | स्यन्ति |
| | स्यसि | स्यथ: | स्यथ |
| | स्यामि | स्याव: | स्याम: |
| **आशीर्लिङ्मा** | यात् | यास्ताम् | यासु: |
| | या: | यास्तम् | यास्त |
| | यासम् | यास्व | यास्म |
| **लुङ्मा** | त् | ताम् | अन् |
| | स् | तम् | त |
| | अम् | व | म (लङमा जस्तै) |
| **लृङ्मा** | स्यत् | स्यताम् | स्यन् |
| | स्य: | स्यतम् | स्यत |
| | स्यम् | स्याव | स्याम |

थ, व, म, ता, स्य. यी प्रत्ययको सेट् धातुमा इट् आगम हुन्छ, अनिट् धातुमा हुँदैन । लुङमा च्लि प्रत्यय, च्लिका स्थानमा सिच् भएपछि, सेट् धातुमा सिच्को इट् आगम हुन्छ, अनिट् धातुमा हुँदैन । इट्को इदेखि परको स्यको सकारको षत्व पनि हुन्छ । सेट् धातु र अनिट् धातुको विवरण पछि गरिनेछ ।

लुङ् लङ् र लृङ्मा हलादि धातुको अट् आगम अजादि धातुको आट् आगम हुन्छ । यी सामान्य कार्य हुन् । विशेष कार्य तत्तत्स्थलमा विभिन्न सूत्रद्वारा हुन्छन् ।

**अत इति–** अत धातु बारम्बार हिँडिरहने अर्थमा छ । (सेट् सकर्मक)

अत्को अन्त्य अकार उदात्त छ त्यसको "उपदेशेऽजनु०"ले इत्संज्ञा र "तस्यंलोप:"ले लोप हुन्छ । अकार उदात्त हुनाले परस्मैपद हुन्छ । अनुदात्त भएको भए "अनुदात्तङित आत्मनेपदम्"ले आत्मनेपद हुन्थ्यो ।

अतति ॥

---

यसदेखि बाहेक धातुहरूमा भएका अनुबन्धलोपको विशिष्ट फल हुन्छ । कहीं आ छ, कहीं ई, उ, ऊ, छन्, कहीं इर् छ, सबैको भिन्न भिन्न फल छ । तल त्यसको केही दिग्दर्शन गराइन्छ-

| जस्तै- | धातु | इत्संज्ञक वर्ण | फल | सूत्र |
|---|---|---|---|---|
| | अत | अ उदात्त | परस्मैपद | "शेषात्कर्तरि०" |
| | एध | अ अनुदात्त | आत्मनेपद | "अनुदात्तङित०" |
| | यज | अ स्वरित | उभयपद | "स्वरितञितः०" |

**जिफला धातुमा-** आकारको इत्संज्ञा भएकोले "आदितश्च"ले इट् निषेध हुन्छ, "ञीत क्तः"ले वर्तमानमा क्त प्रत्यय हुन्छ र 'प्रफुल्लः' यो रूप सिद्ध हुन्छ ।

**टुनदि धातुमा-** इकारको इत्संज्ञा भएकोले "इदितो नुम् धातोः"ले नुम् हुन्छ, टुको इत्संज्ञा भएकोले "ट्वितोऽथुच्"ले अथुच् भएर "आनन्दथुः" रूप बन्दछ ।

| धातु | इत्संज्ञकवर्ण | इत्संज्ञाको फल | सिद्ध रूप |
|---|---|---|---|
| भिदिर् | इर् | "इरितो वा" ले अङ् | अभिदत् |
| चिती | ई | "श्वीदितो निष्ठायाम्"ले इट्निषेध | चित्तम् |
| क्रमु | उ | "उदितो वा" क्त्वामा वेट् | क्रमित्वा, क्रान्त्वा |
| गुपू | ऊ | "स्वरतिसूति०"ले वेट् | गोपिता गोप्ता |
| लोकृ | ऋ | "नाग्लोपिशास्वृदिताम्"ले उपधाको ह्रस्वनिषेध | अलुलोकत् |
| गम्लृ | लृ | "पुषादिद्युताद्य०"ले अङ् | अगमत् |
| कटे | ए | "ह्म्यन्तक्षण०"ले वृद्धिनिषेध | अकटीत् |
| भुजो | ओ | "ओदितश्च"ले इट्निषेध | भुग्नः |
| शीङ् | ङ् | "अनुदात्तङितः"ले आत्मनेपद | शेते |
| डुकृञ् | डु र | "ड्वितः क्त्रिः", क्त्रिप्रत्यय | कृत्रिमम् |
| | ञ् | "स्वरितञितः" आत्मनेपद | करोति, कुरुते |
| त्रपूष् | ष् | "षिद्भिदादिभ्योऽ०"ले अङ् | त्रपा |

कहीं कहीं धातुको अर्थमा भिन्नता देखाएर विशिष्ट कार्य भएको पनि अनुबन्धमा देखिन्छ । इक् स्मरणे, इण् गतौ, यी दुवै धातुमा अनुबन्ध लोप भएपछि इ मात्र रहन्छ तर इण् धातुमा "इणो यण्" लाग्छ, इक् धातुमा लाग्दैन । यस्तै अरू कार्य पनि हुन्छन्, यो दिग्दर्शन मात्र हो ।

**अतति-** अत् धातुदेखि "वर्तमाने लट्" ले लट् भयो लकारका स्थानमा ति भयो सार्वधातुक संज्ञा शप् प्रत्यय भयो, 'अतति' सिद्ध भयो, यस्तै प्रकारले अरू रूप पनि सिद्ध हुन्छन् ।

अत् धातुका लट् लकारका रूपहरू

अतति, अततः, अतन्ति । अतसि, अतथः, अतथ । अतामि, अतावः अतामः ।

---

**४४२. अत आदेः ७ । ४ । ७० ॥**

अभ्यासस्यादेरतो दीर्घः स्यात् । आत । आततुः । आतुः । आतिथ । आतथुः आत । आत । आतिव । आतिम । अतिता । अतिष्यति । अततु ॥

---

**अत इति**– अभ्यासका आदिमा रहेका ह्रस्व अकारका स्थानमा दीर्घ होस् ।

**आत**– अत् धातुदेखि "परोक्षे लिट्"ले लिट् लकार भयो, लका स्थानमा तिप्, णल् भयो, "लिटि धातो०"ले एकाच् धातु हुनाले प्रथम एकाच् अकारको द्वित्व पाएमा "वृक्षप्रचलने शाखा प्रचलन्ति" यो न्याय लाएर अत्को द्वित्व भयो, 'अत्+अत्+अ' भयो, हलादिशेष भयो, 'अ+अत्+अ' भयो, "अकः सवर्णे०"ले पाएको दीर्घलाई बाधेर "अतो गुणे"ले पररूप पायो, त्यसलाई बाधेर "अत आदेः"ले अभ्यासका अकारका स्थानमा दीर्घ आकार भयो, 'आ+अत्+अ' "अकः सवर्णे०"ले दीर्घ भयो, 'आत्+अ', 'आत' सिद्ध भयो ।

**आततुः**– 'अत्+ल्', 'अत्+तस्', 'अत्+अतुस्' पूर्ववत् द्वित्व अभ्यासकार्य 'आत्+अतुस्', 'आततुस्' रुत्व, विसर्ग 'आततुः' सिद्ध भयो ।

**आतुः**– 'अत्+उस्', 'अ+अत्+उस्', 'आ+अत्+उस्', 'आतुः' सिद्ध भयो ।

**आतिथ**– 'अत्+सि', 'अत्+थ' "आर्धधातुक संज्ञा" र "आर्धधातुकस्येड्वलादेः"ले इट् 'अत्+इथ' द्वित्व अभ्यासकार्य 'आतिथ' सिद्ध भयो । यस्तै प्रकारले 'आतथुः', 'आत' पनि सिद्ध हुन्छन् ।

**आत**– अत्, मिप्, णल्, द्वित्व, अभ्यासकार्य भयो, 'आत' सिद्ध भयो ।

**आतिव,आतिम**– अत्, वस्, व, 'अत्+व', इट्, द्वित्व अभ्यासकार्य भयो, 'आतिव' सिद्ध भयो । बहुवचनमा पनि यस्तै प्रकारले 'आतिम' सिद्ध हुन्छ ।

**अतिता**– 'अत्+लुट्', 'अत्+ल्' लकारका स्थानमा तिप्, तासि प्रत्यय, आर्धधातुक संज्ञा, इट्, 'अतितास्+ति' तिका स्थानमा डा, 'अतितास्+आ' टिलोप 'अतिता' सिद्ध भयो । यस्तै प्रकारले अतितारौ आदि रूप पनि हुन्छन् । लुट्का सबै रूप–

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र.पु. | अतिता | अतितारौ | अतितारः । |
| म.पु. | अतितासि | अतितास्थः | अतितास्थ |
| उ.पु. | अतितास्मि | अतितास्वः | अतितास्मः । |

**अतिष्यति**– 'अत्+लृट्', तिप्, स्य, इट्, षत्व, 'अतिष्यति' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि हुन्छन् । लृट्का सबै रूप–

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र.पु. | अतिष्यति | अतिष्यतः | अतिष्यन्ति |
| म.पु. | अतिष्यसि | अतिष्यथः | अतिष्यथ । |
| उ.पु. | अतिष्यामि | अतिष्यावः | अतिष्यामः । |

**अततु**– 'अत्+लोट्' (दुवै) 'अत्+ल्', 'अत्+ति', 'अत्+अ+ति', अतति "एरुः"ले उत्व 'अततु' सिद्ध भयो, आशीर्वाद अर्थ बुझिँदामा तुका स्थानमा तात् आदेश भएपछि, 'अततात्' पनि सिद्ध भयो । वैकल्पिक तात् नभएमा अततु हुन्छ । विधिलोट् र आशीःर्लोट् दुवै लकारका सम्मिलित रूप-

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र.पु. | अततु/तात् | अतताम् | अतन्तु |
| म.पु. | अत/तात् | अततम् | अतत |
| उ.पु. | अतानि | अताव | अताम |

---

**४४३. आडजादीनाम् ६ । ४ । ७२ ॥**

अजादेरङ्गस्याट् लुङ्लङ्लृङ्क्षु । आतत् । अतेत् । अत्यात् । अत्यास्ताम् । लुङि सिचि इडागमे कृते

**४४४. अस्तिसिचोऽपृक्ते ७ । ३ । ९६ ॥**

विद्यमानात् सिचोऽस्तेश्च परस्यापृक्तस्य हल ईडागमः ॥

**४४५. इट ईटि ८ । २ । २८ ॥**

इटः परस्य सस्य लोपः स्यादीटि परे । **वा.**(सिज्लोप एकादेशे सिद्धो वाच्यः) । आतीत् । आतिष्टाम् ॥

**४४६. सिजभ्यस्तविदिभ्यश्च ३ । ४ । १०९ ॥**

सिचोऽभ्यस्ताद्विदेश्च परस्य ङित्संबन्धिनो झेर्जुस् ।

---

**आडिति**– अच् आदिमा हुने अङ्गको आट् आगम होस्, लुङ्, लङ् र लृङ् लकार पर भएमा । यो सूत्रले "लुङ्लङ्लृङ्क्ष्वडुदात्तः"लाई बाध्दछ ।

**आतत्**– अत् धातुदेखि लङ् भयो, 'अत्+ल्' भयो, "लुङ्लङ्लृङ्क्षु०"लाई बाधेर 'आडजादीनाम्"ले आट् भयो, 'आटश्च'ले वृद्धि भयो, 'आत्+ल्', लकारका स्थानमा ति, शप् प्रत्यय भयो, 'आतति' तिका इकारको "इतश्च"ले लोप भयो, 'आतत्' सिद्ध भयो । अरू रूप पनि पूर्ववत् यथाप्राप्त प्रक्रिया गरेपछि सिद्ध हुन्छन् । लङ् लकारका सबै रूप तल छन्–

| **पुरुष** | **एकबचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्र.पु. | आतत् | आतताम् | आतन् |
| म.पु. | आतः | आततम् | आतत |
| उ.पु. | आतम् | आताव | आताम |

**विध्यादिलिङ्**– अतेत्, अतेताम्, अतेयुः । अतेः, अतेतम्, अतेत । अतेयम्, अतेव अतेम ।

**आशीर्लिङ्**– अत्यात्, अत्यास्ताम्, अत्यासुः । अत्याः, अत्यास्तम्, अत्यास्त । अत्यासम्, अत्यास्व, अत्यास्म ।

**लुङि इति**– लुङ्मा च्लि प्रत्ययका स्थानमा सिच् आदेश र सिच्को इट् आगम गरेपछि–

**अस्ति सिच इति**– विद्यमान सिच् र अस् धातुदेखि पररहेका अपृक्त हल्को इट् आगम होस् ।

**इट इति**– इट्देखि पररहेका दन्त्य सकारको लोप होस् ईट् पर भएमा ।

(**वा.**) **सिज्लोप इति**– सिच्को लोप एकादेशको विषयमा सिद्ध होस् भन्नू ।

**आतीत्**– अत् धातुदेखि लुङ् लकार भयो, "आडजादीनाम्"ले आट् आगम भयो, 'आत्+ल्' भयो, लका स्थानमा ति भयो, शप्लाई बाधेर च्लिप्रत्यय भयो, च्लिका स्थानमा सिच् भयो, अनुबन्धलोप भयो, 'आत्+स्+ति' सिच्को इट् 'आत्+इस्+ति' तिका इकारको "इतश्च"ले लोप भयो, 'आत्+इस्+त्' भयो, त् को "अस्तिसिचो०"ले ईट् आगम भयो, 'आतिस्+ईत्' भयो, "इट ईटि"ले सकारको लोप भयो, 'आति+ईत्' "अकः सवर्णे०"ले दीर्घ प्राएकोमा "पूर्वत्रासिद्धम्" लाएर असिद्ध भएको थियो, "सिज्लोप एकादेशे०" यो वार्तिकले सिद्ध होस् भनेकोले सिद्ध भयो र दीर्घ भयो, 'आतीत्' सिद्ध भयो ।

**आतिष्टाम्**– अत्धातुदेखि लुङ्, अट्, तस्, च्लि, सिच्, इट् भएपछि 'आतिस्+तस्' भयो, "तस्थस्थमिपां०"ले तस्को स्थानमा ताम्, षत्व, ष्टुत्व, भयो, 'आतिष्टाम्' सिद्ध भयो ।

**सिजभ्यस्तेति**– सिच् प्रत्यय, अभ्यस्तसंज्ञक धातु र विद् धातुदेखि पर रहेका ङित् लकार सम्बन्धी झिका स्थानमा जुस् आदेश होस् ।

---

आतिषुः । आतीः । आतिष्टम् । आतिष्ट । अतिषम् । आतिष्व । आतिष्म । आतिष्यत् ॥

**षिध** गत्याम् ॥ ३ ॥

**४४७. ह्रस्वं लघु** १ । ४ । १० ॥

**४४८. संयोगे गुरु** १ । ४ । ११ ॥

संयोगे परे ह्रस्वं गुरु स्यात् ॥

**४४९. दीर्घं च** १ । ४ । १२ ॥

गुरु स्यात् ॥

**४५०. पुगन्तलघूपधस्य च** ७ । ३ । ८६ ॥

पुगन्तस्य लघूपधस्य चाङ्गस्येको गुणः सार्वधातुकार्धधातुकयोः । धात्वादेरिति सः । सेधति ।

---

**आतिषुः–** अत् लङ्, आट् वृद्धि, 'आत्+ल्', 'आत्+झि' च्लि, सिच्, इट् 'आतिस्+झि' भएपछि "झोऽन्तः"लाई बाधेर "सिजभ्यस्त०"ले झिका स्थानमा जुस् "चुटू"ले जकारको इत्संज्ञा भयो, 'आतिसुस्', षत्व, रुत्व, विसर्ग भयो, 'आतिषुः' सिद्ध भयो । अरू रूप पनि यही प्रकारले सिद्ध हुन्छ ।

**बाँकी रूप-** आतीः, आतिष्टम्, आतिष्ट । आतिषम्, आतिष्व, आतिष्म ।

**आतिष्यत्–** अत्, लृङ्, आट्, वृद्धि, 'आत्+ल्', ति, शप्लाई बाधेर स्य 'आतिस्यति' तिका इकारको लोप, षत्व, 'आतिष्यत्' सिद्ध भयो । यस्तै प्रकारले 'आतिष्यताम्' आदि रूप पनि सिद्ध गर्नू ।

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र.पु. | आतिष्यत् | आतिष्यताम् | आतिष्यन् |
| म.पु. | आतिष्यः | आतिष्यतम् | आतिष्यत |
| उ.पु. | आतिष्यम् | आतिष्याव | आतिष्याम |

**षिध–** धातु हिंड्नु अर्थमा छ । अकारको पूर्ववत् इत्संज्ञा र लोप हुन्छ । (सेट् सकर्मक)

**ह्रस्वमिति–** ह्रस्व वर्ण लघुसंज्ञक होस् ।

**संयोग इति–** संयोग पर भएमा ह्रस्ववर्ण गुरुसंज्ञक होस् ।

**दीर्घमिति–** दीर्घ वर्ण पनि गुरुसंज्ञक होस् ।

**पुगन्तेति–** पुक् आगम अन्तमा हुने अङ्ग र लघु उपधामा हुने अङ्गका इक्का स्थानमा गुण होस्, सार्वधातुकसंज्ञक र आर्धधातुकसंज्ञक प्रत्यय परभएमा ।

**धात्वादेरिति–** "धात्वादेः षः सः" यो सूत्रले षिध् का षकारका स्थानमा दन्त्य सकार हुन्छ । सकार भएपछि सिध् धातु हुन्छ ।

**सेधति–** सिध् धातुदेखि "वर्तमाने लट्"ले लट् लकारका स्थानमा तिप् भयो, शप्प्रत्यय भयो, 'सिध्+अ+ति' भयो, सिका इकारको "ह्रस्वं लघु"ले लघुसंज्ञा भयो, अ लाई पर राखेर सिध्को इकारलाई "अलोऽन्त्यात्०"ले उपधासंज्ञा भयो, अनि "पुगन्तलघूपधस्य च"ले सार्वधातुकसंज्ञक प्रत्यय अ पर हुनाले 'सिध्'को उपधा सिका इकारका स्थानमा गुण भनेका अ,ए,ओ सबै पाएमा आन्तरतम्यात् सिका इकारका स्थानमा एकार भयो, 'सेध्+अति' 'सेधति' सिद्ध भयो । यस्तै प्रकारले सेधतः, सेधन्ति आदि रूप हुन्छन् । सबै रूप तल छन् ।

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र.पु. | सेधति | सेधतः | सेधन्ति |
| म.पु. | सेधसि | सेधथः | सेधथ |
| उ.पु. | सेधामि | सेधावः | सेधावः |

षत्वम् । सिषेध ॥

**४५१. असंयोगाल्लिट् कित् १ । २ । ५ ॥**

असंयोगात्परोऽपिल्लिट् कित् स्यात् । सिषिधतुः । सिषिधुः । सिषेधिथ । सिषिधथुः । सिषिध । सिषेध । सिषिधिव । सिषिधिम । सेधिता । सेधिष्यति । सेधतु । असेधत् । सेधेत् । सिध्यात् ।

---

**षत्वमिति**– षत्व भएपछि 'सिषेध' सिद्ध हुन्छ ।

**सिषेध**– सिध्, लिट्, तिप्, णल्, द्वित्व, 'सिध्+सिध्+अ' हलादिशेष "पुगन्त०"ले गुण भएपछि, 'सिसेध' यहाँ दोस्रो सकार इण्देखि पर रहेको आदेश रूप दन्त्य सकार हुनाले "आदेश प्र०"ले षत्व भयो, 'सिषेध' सिद्ध भयो ।

**असंयोगात् इति**– संयोगभिन्नदेखि पर रहेको पित् भिन्न लिट् लकार कित्जस्तो होस् ।

**सिषिधतुः**– सिध् धातुदेखि लिट्, तस्, अतुस्, द्वित्व, अभ्यासकार्य, 'सिसिध्+अतुस्' अतुस्लाई "असंयोगाल्लिट् कित्"ले कित् गरेपछि "पुगन्तलघूपधस्य च"ले पाएको गुण "क्ङिति च"ले निषेध भयो, वर्णमेलन भयो, षत्व भयो, रुत्व, विसर्ग भयो, 'सिषिधतुः' सिद्ध भयो । "सिषिधुः" इत्यादि अरू रूपहरू पनि यस्तै गरी हुन्छन् । लिट् लकारका सबै रूप मूलमै छन् । अरू लकारका पनि एक एक रूप मूलमा दिएको छ । विशेष कार्य छैन अरू रूप आफै सिद्ध गर्नु । लुङ्मा आगामी सूत्र "वदव्रज०"ले पाएको वृद्धि "नेटि"ले निषेध हुन्छ । सबै लकारको रूप तालिका तल दिइन्छ-

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| **लुट्-** | प्र.पु. | सेधिता | सेधितारौ | सेधितारः |
| | म.पु. | सेधितासि | सेधितास्थः | सेधितास्थ |
| | उ.पु. | सेधितास्मि | सेधितास्वः | सेधितास्मः |
| **लृट्-** | प्र.पु. | सेधिष्यति | सेधिष्यतः | सेधिष्यन्ति |
| | म.पु. | सेधिष्यसि | सेधिष्यथः | सेधिष्यथ |
| | उ.पु. | सेधिष्यामि | सेधिष्यावः | सेधिष्यामः |
| **लोट्-** | प्र.पु. | सेधतु/सेधतात् | सेधताम् | सेधन्तु |
| | म.पु. | सेध/सेधतात् | सेधतम् | सेधत |
| | उ.पु. | सेधानि | सेधाव | सेधाम |
| **लङ्-** | प्र.पु. | असेधत् | असेधताम् | असेधन् |
| | म.पु. | असेधः | असेधतम्, | असेधत |
| | उ.पु. | असेधम् | असेधाव | असेधाम |
| **विध्यादिलिङ्-** | प्र.पु. | सेधेत् | सेधेताम् | सेधेयुः |
| | म.पु. | सेधेः | सेधेतम् | सेधेत |
| | उ.पु. | सेधेयम् | सेधेव | सेधेम |
| **आशीर्लिङ्-** | प्र.पु. | सिध्यात् | सिध्यास्ताम् | सिध्यासुः |
| | म.पु. | सिध्याः | सिध्यास्तम् | सिध्यास्त |
| | उ.पु. | सिध्यासम् | सिध्यास्व | सिध्यास्म |

असेधीत् । असेधिष्यत् । एवम्–चिती संज्ञाने ॥ ४ ॥ **शुच** शोके ॥ ५ ॥ **गद** व्यक्तायां वाचि ॥६॥ गदति ॥

**४५२. नेर्गदनदपतपदघुमास्यतिहन्तियातिवातिद्रातिप्सातिवपतिवहतिशाम्यतिचिनोतिदेग्धिषु च ८।४।१७॥**

उपसर्गस्थान्निमित्तात्परस्य नेर्नस्य णो गदादिषु परेषु । प्रणिगदति ॥

---

| | | | | |
|---|---|---|---|---|
| लुङ्– | प्र.पु. | असेधीत् | असेधिष्टाम् | असेधिषुः |
| | म.पु. | असेधीः | असेधिष्टम् | असेधिष्ट |
| | उ.पु. | असेधिषम् | असेधिष्व | असेधिष्म |
| लृङ्– | प्र.पु. | असेधिष्यत् | असेधिष्यताम् | असेधिष्यन् |
| | म.पु. | असेधिष्यः | असेधिष्यतम् | असेधिष्यत |
| | उ.पु. | असेधिष्यम् | असेधिष्याव | असेधिष्याम |

**उपसर्गको योगमा–** निषेधति/प्रतिषेधति (निषेध गर्छ ।) उत्सेधति (उठ्छ ।)

**एवमिति–** यस्तै प्रकारले चिती धातु होश पाउनु अर्थमा छ । शुच धातु शोक गर्नु अर्थमा छ । धातुका रूप पनि हुन्छन् । चितीका ईकारको शुचका अकारको इत्संज्ञा र लोप हुन्छ । (यी दुवै धातु सेट् अकर्मक हुन् ।) यी धातुका लट् आदि लकारका एक एक रूप तल दिइन्छन् ।

**चित्–** चेतति । चिचेत । चेतिता । चेतिष्यति । चेततु/तात् । अचेतत् । चेतेत् । चित्यात् । अचेतीत् । अचेतिष्यत् ।

**शुच्–** शोचति । शुशोच । शोचिता । शोचिष्यति । शोचतु/तात् । अशोचत् । शोचेत् । शुच्यात् । अशोचीत् । अशोचिष्यत् ।

गदधातु स्पष्ट बोल्नु अर्थमा छ । (सेट् सकर्मक) मनुष्यको बोली स्पष्ट हुन्छ । सिंह, वानर, सुगा आदिले पनि यदि मनुष्यको भाषा बोलेभने, यो धातुको प्रयोग हुन्छ । जस्तै- 'सिंहोरुसत्वं निजगाद सिंहः' (रघुवंशकाव्य २।३३) । अतः गद धातुको प्रयोग मनुष्यको बोली बोल्नु अर्थमा हुन्छ ।

**गदति–** 'गद्+लट्', 'गद्+ति', शप्, 'गदति' इत्यादि रूप पूर्ववत् सिद्ध हुन्छन् । गदति, गदतः, गदन्ति । गदसि, गदथः, गदथ । गदामि, गदावः, गदामः ।

**नेर्गदिति–** उपसर्गमा रहेका निमित्तदेखि पर रहेका निका नकारका स्थानमा णकार होस्, गद, नद, पत, पद धातु, घुसंज्ञक धातु, मा, षो, हन्, या, वा, द्रा, प्सा, वप, वह, शम्, चि, दिह, धातु पर भएमा ।

**गदनदादि धातुको परिचय–** गद व्यक्तायां वाचि (भ्वा.) णद अव्यक्ते शब्दे (भ्वा.) पत्लृ पतने (भ्वा.) पद गतौ (भ्वा.) । दा रूप हुने धातु र धा रूप हुने धातुलाई "दा धा घ्वदाप्"ले घुसंज्ञा हुन्छ । दा रूप र धा रूप हुने धातु तल दिइन्छ । दाण् दाने (भ्वा.), डुदाञ् दाने (जुहो.), दोऽवखण्डने (दिवादि), डुधाञ् धारणपोषणयोः (जुहो.), धेट् पाने (भ्वा.), देङ् रक्षणे (भ्वा.) । यहाँ जो एजन्त धातु छ, तिनको "आदेच उपदेशेऽशिति"ले आत्व भएर दा, धा, रूप हुन्छ । मा आदि धातु क्रमशः- मा माने (अदादि.) माङ् माने शब्दे च (जुहो.), षोऽन्तकर्मणि (दिवादि), हन हिंसागत्योः । (अदादि), या प्रापणे, वा गतिगन्धनयोः, द्रा कुत्सायां गतौ, प्सा भक्षणे (अदादि), शमु उपशमे ( दिवादि), चिञ् चयने (स्वादि), दिह उपचये (अदादि) ।

**प्रणिगदति–** प्रनि उपसर्गपूर्वक गद् धातुदेखि लट् लकार, तिप्, शबादि भएर 'प्रनिगदति'

**४५३. कुहोश्चुः ७ । ४ । ६२ ॥**

अभ्यासकवर्गहकारयोश्चवर्गादेशः ॥

**४५४. अत उपधायाः ७ । २ । ११६ ॥**

उपधाया अतो वृद्धिः स्यात् ञिति णिति च प्रत्यये परे । जगाद । जगदतुः । जगदुः । जगदिथ । जगदथुः । जगद ॥

**४५५. णलुत्तमो वा ७ । १ । ९१ ॥**

उत्तमो णल् वा णित्स्यात् । जगाद, जगद ।

---

भयो । 'प्रनिगदति' यहाँ उपसर्गमा रहेको निमित्त प्रको रेफ छ त्यसदेखि पर रहेको नि को नकार छ, गदादि धातु पर छ, गदतिको गद् र निका नकारका स्थानमा "नेर्गदनद०"ले णकार भयो, 'प्रणिगदति' सिद्ध भयो । यस्तै प्रकारले 'प्रणिनदति', 'प्रणिपतति', 'प्रणिपत्य', 'प्रणिददाति' 'प्रणिदधाति', 'प्रणिधाय', 'प्रणिहन्ति' आदि रूपहरू हुन्छन् ।

**कुहोरिति-** अभ्यासमा रहेका कवर्ग र हकारका स्थानमा चवर्ग आदेश होऊन् । यो सूत्र सपादी छ । "अभ्यासे चर्च" त्रिपादी छ । अत एव "कुहोश्चुः"ले चुत्व गरेपछि मात्र "अभ्यासे चर्च" लाग्छ । यहाँ "यथासङ्ख्यमनुदेशः समानाम्" लाग्दैन । स्थानी क,ख,ग,घ,ङ, ह छवटा छन् । आदेश पाँचवटा छन् । स्थान र अर्थबाट नियम नभएपछि गुण(प्रयत्न)मा जानु पर्छ । आभ्यन्तर प्रयत्नमा नियम हुँदैन र वाह्य प्रयत्नमा जाँदा विवार,श्वास,अघोष, अल्पप्राण, प्रयत्न वाला ककारका स्थानमा तत्सदृश चकार, विवार,श्वास,अघोष, महाप्राण प्रयत्न वाला खकारका स्थानमा तत्सदृश छकार हुन्छ । सम्वार,नाद,घोष, अल्पप्राण प्रयत्न वाला गकारका स्थानमा तत्सदृश जकार र ञकार ठमध्ये निरनुनासिक जकार, संवार,नाद,घोष, महाप्राण प्रयत्न वाला घकारका स्थानमा तत्सदृश झकार हुन्छ । त्यस्तै संवार,नाद,घोष, महाप्राण प्रयत्न वाला हकारको स्थानमा पनि तत्सदृश झकार नै हुन्छ । सम्वार,नाद,घोष, अल्पप्राण प्रयत्न वाला ङकारका स्थानमा ज र ञ प्राप्त हुन्छन् । अनुनासिक (नासिका स्थानवाला) ङकारका स्थानमा अनुनासिक ञकार हुन्छ । अत एव "अभ्यासे चर्च" ले अभ्यासमा कवर्ग र हकार देख्न पाउँदैन । यो कुरा "अभ्यासे चर्च"को टीकामा पनि भनिएको छ ।

**खन्धातुमा–** जस्तै- 'ख+खन्+अ' भएपछि, यहाँ चुत्व भएर 'छ+खन्+अ', 'चखन्+अ' 'चखान' हुन्छ । घट– 'झघट्+ए', 'जघटे' हुन्छ । हन्– 'जघान' । कृ- 'चकार' । गृ- 'जगार' । गद्- 'जगाद' । ङुङ्- 'ञुङुवे' आदि ।

**अत इति–** उपधाका ह्रस्व अकारको वृद्धि होस् ञित्, प्रत्यय णित् प्रत्यय भएर पर भएमा

**जगाद–** गद धातुदेखि लिट् लकार प्रथमपुरुष एकवचन तिप् तिप्का स्थानमा णल् भयो, 'गद्+अ' द्वित्व हलादिशेष भयो, 'गगद्+अ' भयो, "कुहोश्चुः" चुत्व हुँदा आन्तरतम्यात् संवारनादघोष अल्पंप्राण प्रयत्न भएको गका स्थानमा तत्सदृश ज र ञ पायो, निरनुनासिक गकारका स्थानमा निरनुनासिक जकार भयो, 'जगद्+अ' भयो, "अतः उपधायाः"ले उपधाका अकारका स्थानमा वृद्धि हुँदा आकार भयो, 'जगाद' सिद्ध भयो । (यहाँ चुत्व गरेपछि जश्त्व गर्दा जकारका स्थानमा जकार नै हुने हुँदा जश्त्व गरे पनि हुन्छ, नगरे पनि हुन्छ ।)

**जगदतुः–** गद् लिट्, तस्, अतुस्, द्वित्व, हलादिशेष, चुत्व 'जगदतुः' सिद्ध भयो । उस्मा जगदुः । थल्मा इट् जगदिथ । जगदथुः, जगद यी रूप पनि पूर्ववत् सिद्ध हुन्छन् । उत्तम पुरुषको णल्मा विशेषता छ–

**णलुत्तम इति–** उत्तमपुरुषसम्बन्धी णल् विकल्पले णित् होस् । णित् भएको पक्षमा वृद्धि हुन्छ, नभएको पक्षमा वृद्धि हुँदैन ।

**जगाद/जगद–** गद् धातुदेखि लिट् लकारको उत्तमपुरुष एकवचन मिप्, णल्, 'गद्+अ'

जगदिव जगदिम । गदिता । गदिष्यति । गदतु । अगदत् । गदेत् गद्यात् ॥

**४५६. अतो हलादेर्लघोः ७।२।७॥**

हलादेर्लघोरकारस्य वृद्धिर्वेडादौ परस्मैपदे सिचि । अगादीत्/अगदीत् । अगदिष्यत् ॥

**णद** अव्यक्त शब्दे ॥७॥

**४५७. णो नः ६।१।६५॥**

धात्वादेर्णस्य नः । णोपदेशास्त्वनर्द्नाटिनाथ्नाध्नन्द्नक्कनॄनृतः ॥

---

द्वित्व, अभ्यासकार्य भएर 'जगद्+अ' भएपछि, "णलुत्तमो वा"ले अको वैकल्पिक णिद्भाव भयो । णिद्भाव भएको पक्षमा "अत उपधायाः"ले वृद्धि भयो, 'जगाद' भयो । णित् नभएका पक्षमा वृद्धि भएन 'जगद' भयो, यसरी दुई रूप सिद्ध भए ।

**जगदिव, जगदिम**– यहाँ इट्आगम विशेष छ ।

गदिता । गदिष्यति । गदतु/तात् । अगदत् । गदेत् । गद्यात् यी रूप पूर्ववत् हुन्छन् । लुङ्मा फरक छ–

**अत इति**– हल् आदिमा हुने लघुसंज्ञक ह्रस्व अकारको स्थानमा वृद्धि विकल्पले होस् इट् आदिमा हुने, परस्मैपद पर भएको सिच् पर भएमा ।

**अगादीत्/अगदीत्**– गद्धातुदेखि लुङ्, अट्आगम, 'अगद्+ल्', 'अगद्+ति' च्लि, सिच् 'अगद्+स्+ति', 'अगद्+इस्+ति', 'अगद्+इस्+त्', 'अगद्+इस्+ईत्' भएपछि, हल् आदिमा हुने लघुसंज्ञक ह्रस्व अकार अगद्का गको अकारका स्थानमा इट् आदिमा हुने परस्मैपद पर भएको सिच् 'इस्+ईत्' पर हुनाले वृद्धि भयो, "अतो हलादेर्लघोः"ले 'अगादिस्+ईत्', भयो, 'इट ईटि'ले, सकारको लोप, दीर्घ भयो, 'अगादीत्' सिद्ध भयो । वृद्धि नभएको पक्षमा सकारको लोप र दीर्घ भयो, 'अगदीत्' सिद्ध भयो । यसरी लुङ्मा सबै पुरुष र वचनमा दुई-दुई रूप हुन्छन् । छुट्याएर वृद्धि भएको पक्ष र नभएको पक्षका रूप तल दिइन्छ–

**लङ्**– वृद्धि भएको पक्षमा- अगादीत्, अगादिष्टाम्, अगादिषुः । अगादीः, अगादिष्टम्, अगादिष्ट । अगादिषम्, अगादिष्व । अगादिष्म ।

**लङ्– वृद्धि नभएको पक्षमा**– अगदीत्, अगदिष्टाम्, अगदिषुः । अगदीः अगदिष्टम् अगदिष्ट । अगदिषम्, अगदिष्व, अगदिष्म ।

**लृङ्– अगदिष्यत्**– गद, लृङ् 'अगद्+ल्', ति, स्य, इट्, इकारलोप भयो । 'अगदिष्यत्' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप सिद्ध गर्नु ।

**णद** धातु अस्पष्ट शब्द गर्नु र बजाउनु अर्थमा छ । यो धातु पशुको शब्द वाजा आदिको शब्दमा प्रयोग हुन्छ (सेट्, शब्द गर्नु अर्थमा अकर्मक, बजाउनु अर्थमा सकर्मक) । बजाउने अर्थमा सकर्मक भएको उदाहरण "ननाद ढक्कां नवपञ्चवारम्" (नन्दिकेश्वर काशिका) ।

**ण इति**– धातुका आदिमा रहेका णकारका स्थानमा नकार आदेश होस् । यसले णकारका स्थानमा नकार गरेपछि सबै धातु नकारादि हुन्छन् । अनि कुन णकारादि (णोपदेश) धातु हो, कुन नकारादि (नोपदेश) धातु हो, थाहा हुँदैन । अतः भाष्यकारले णोपदेश धातुको निर्णय यो वाक्यद्वारा गर्नुभएको छ ।

**णोपदेशा इति**– णोपदेश धातुहरू त नर्द् धातु, नाट् धातु, नाध् धातु, नाथ् धातु, नन्द धातु, नक्क धातु, नॄ धातु, नृत् धातुदेखि भिन्न धातु हुन् ।

**यी धातु यसप्रकार छन्**- नर्द शब्दे (भ्वादि.), नट अवस्कन्दे (चुरादि), नाथृ नाधृ याञ्चोपतापैश्वर्याशीःषु (भ्वादि.), नट अवस्कन्दे (चुरादि), टुनदि समृद्धौ (भ्वादि.), नक्क नाशने

**४५८. उपसर्गादसमासेऽपि णोपदेशस्य ८।४।१४॥**

उपसर्गस्थान्निमित्तात्परस्य णोपदेशस्य धातोर्नस्य णः । प्रणदति । प्रणिनदति । नदति । ननाद ॥

**४५९. अत एकहल्मध्येऽनादेशादेर्लिटि ६।४।१२०॥**

लिण्निमित्तादेशादिकं न भवति यदङ्गं तदवयवस्यासंयुक्तहल्मध्यस्थस्यात् एत्वमभ्यासलोपश्च किति लिटि । नेदतुः ।

---

(चुरादि), नृ नये (भ्वादि क्र्यादि), नृती गात्रविक्षेपे (दिवादि)

णोपदेश धातुमा स्थानविशेषले णत्व हुन्छ, नोपदेश धातुमा हुँदैन । त्यो कुरा निम्नलिखित सूत्रबाट स्पष्ट हुन्छ ।

**उपसर्गादिति**– उपसर्गमा रहेका निमित्तदेखि पर रहेका णोपदेश धातुका नकारका स्थानमा णत्व होस् समास भए पनि नभए पनि ।

**णद**– धातुमा दका अकारको इत्संज्ञा, लोप भएपछि "णो नः" ले णद यो णोपदेश धातु हुनाले णकारका स्थानमा नकार भयो नद्धातु भयो ।

**प्रणदति**– प्र उपसर्गपूर्वक नद् धातुदेखि लट् तिप् शप् आदि भयो, 'प्रनदति' भयो, "उपसर्गादसमासेऽपि०"ले उपसर्गस्थनिमित्त प्रको रेफदेखि पर हुनाले णोपदेश नद् धातुका नकारका स्थानमा णकार भयो, 'प्रणदति' सिद्ध भयो । त्यस्तै, प्र नि उपसर्ग पूर्वक नद् धातु देखि लट्, तिप्, शप् भयो, 'प्रनिनदति' भयो "नेर्गदनद०"ले निका नकारका स्थानमा णकार भयो, 'प्रणिनदति', सिद्ध भयो ।

**नदति**– नद् धातुदेखि लट् लकार भयो लका स्थानमा ति भयो 'नद्+ति' शप् भयो 'नदति' सिद्ध भयो । 'नदतः', 'नदन्ति' इत्यादि सबै रूप लट्का लकारका स्थानमा तस् आदि र शप् आदि गरेपछि पूर्ववत् सिद्ध हुन्छन् ।

**ननाद**– नद् धातुदेखि लिट्, लकारका स्थानमा तिप्, तिका स्थानमा णल्, द्वित्व, अभ्यास कार्य 'ननद्+अ' "अत उपधायाः"ले वृद्धि भयो, 'ननाद' सिद्ध भयो ।

**अत इति**– लिट् लाई निमित्त मानेर भएको वैरूप्यसम्पादक आदेश आदिमा न हुने जो अङ्ग, त्यसको अवयव असंयुक्तहल्का माझमा रहेको ह्रस्व अकारका स्थानमा एकार आदेश होस्, अभ्यासको लोप पनि होस् कित् लिट् पर भएमा ।

यो सूत्रले एत्व र अभ्यासलोप दुवै काम गर्छ साथै यो सूत्रले "हलादि शेषः"लाई बाध्दछ । यो सूत्र प्रवृत्ति हुन यी ४ कुरा आवश्यक छन् (१) द्वित्व भएको उत्तरखण्डमा ह्रस्व अकार हुनुपर्छ, (२) त्यो ह्रस्वअकार संयुक्त हल्को माझमा हुनु हुँदैन, (३) पूर्वखण्डमा लिट्लाई निमित्त मानेर कुनै आदेश नभएको हुनुपर्छ (४) कित् लिट् पर हुनु पर्छ ।

षिध धातुमा अकार नभएकोले एत्व अभ्यास लोप भएन र 'सिषिधतुः' भयो । रास्धातुमा पनि ह्रस्व अकार नभएकोले एत्व र अभ्यासको लोप भएन, 'ररासे' भयो । त्सर्धातुमा संयुक्त हल्का माझको अकार हुनाले यो सूत्र लागेन, 'तत्सरतुः' भयो । गद् धातुमा लिट्लाई निमित्त मानेर अभ्यासमा चवर्ग आदेश भएकोले यो सूत्रले उक्त कार्य भएन 'जगदतुः' भयो ।

नद् धातुमा उक्त सबै कुरा मिलेकोले नेदतुः यहाँ एत्व र अभ्यास लोप हुन्छ ।

**नेदतुः**– नद् धातुदेखि लिट् लकार भयो लकारका स्थानमा तस् तस्का स्थानमा अतुस् भयो द्वित्व भयो 'नद्+नद्+अतुस्' अतुस्को "असंयोगात"ले कित्त्व भयो, अब "हलादि शेषः" लाई बाधेर

---

नेदुः ॥

**४६०. थलि च सेटि ६।४।१२१॥**

प्रागुक्तं स्यात्। नेदिथ। नेदथुः। नेद। ननाद, ननद। नेदिव। नेदिम। नदिता। नदिष्यति। नदतु। अनदत्। नदेत्। नद्यात्। अनादीत्, अनदीत्। अनदिष्यत् ॥ **टुनदि समृद्धौ** ॥८॥

**४६१. आदिर्ञिटुडवः १।३।५॥**

उपदेशे धातोराद्या एते इतः स्युः ॥

**४६२. इदितो नुम् धातोः ७।१।५८॥**

---

"अत एकहल्मध्ये०"ले लिट्लाई निमित्त मानेर भएको आदेश आदिमा नहुने अङ्ग नद्नद् भएको र संयुक्त हल्का माझमा नरहेको उत्तरखण्डको नद्को अकार हुनाले र कित् लिट् अतुस् पर भएको हुनाले अकारका स्थानमा एकार भयो अभ्यासको लोप पनि भयो, 'नेदतुः' सिद्ध भयो।

**नेदुः**– 'नद्+लिट्', 'नद्+ल्', झि, उस्, द्वित्व, 'नद्+नद्+उस्' एत्व र अभ्यास लोप 'नेदुः' सिद्ध भयो।

**थलि चेति**– इट् आगम भएको थल् पर भएमा पूर्वोक्त अवस्थामा एत्व र अभ्यासलोप होस्। पूर्वोक्त अवस्था भन्नाले अघिल्लो सूत्रको व्याख्यानमा १,२,३ नं.मा विवरण गरिएका कुरा हुन्।

**नेदिथ**– नद् लिट्, सिप्, थल्, 'नद्+थल्' इट्, 'नद्+इथ' द्वित्व 'नद्+नद्+इथ' भएपछि "थलि च सेटि"ले एत्व र अभ्यासको लोप भयो, 'नेदिथ' सिद्ध भयो।

**नेदथुः**–'नद्+लिट्', थस्, अथुस् आदेश, कित्व, द्वित्व, 'नद्+नद्+अथुस्' "अतएकहल्मध्ये०"ले एत्व र अभ्यासलोप 'नेदथुस्'सकारको रुत्व, विसर्ग भयो, 'नेदथुः' सिद्ध भयो।

**नेद**– 'नद्+थ', 'नद्+अ', 'नद्+नद्+अ', कित्वात् "अतएकहल्मध्ये०"ले एत्व र अभ्यासलोप भयो, 'नेद' सिद्ध भयो।

**ननाद/ननद**– नद् धातुदेखि लिट्, लकारका स्थानमा मिप्, मिप्का स्थानमा णल्, 'नद्+अ' द्वित्व 'नद्+नद्+अ' मिप् कित् नहुनाले एत्व र अभ्यास लोप भएन, हलादिशेष भयो 'ननद्+अ' भयो "णलुत्तमो वा"ले अ को वैकल्पिक णित्व गरेको हुनाले णित् भएका पक्षमा "अत उपधायाः"ले वृद्धि भयो, 'ननाद' सिद्ध भयो, नभएका पक्षमा 'ननद' सिद्ध भयो।

**नेदिव, नेदिम**– कित् लिट् व र म मा पूर्ववत् एत्व र अभ्यासलोप भयो 'नेदिव', 'नेदिम' यी रूप सिद्ध भए।

नदिता। नदिष्यति। नदतु/तात्। अनदत्। नदेत्। नद्यात्। अनादीत्/अनदीत्। अनदिष्यत्। यी स्थलमा गद धातुमा जस्तै साधन प्रक्रिया हुन्छ।

**टुनदीति**– टुनदि धातु समृद्धि (खुशी हुनु) अर्थमा छ। (सेट् अकर्मक)

टुनदि यहाँ टुको र इकारको इत्संज्ञा हुन्छ। इकारको "उपदेशेऽजनुनासिक इत्"ले इत्संज्ञा हुन्छ। टुको इत्संज्ञा गर्ने सूत्र तल दिइन्छ।

**आदिरिति**– उपदेशमा धातुका आदिमा रहेका ञि, टु, डु, यी इत्संज्ञक होऊन्।

**इदित इति**– ह्रस्व इकारको इत्संज्ञाको हुने धातुको नुम् आगम होस्। नुम् आगमका मकार उकारको इत्संज्ञा लोप भएर न् बाँकी रहन्छ "मिदचोऽन्त्यात्परः" लगाएर धातुका अन्त्य अच्देखि पर धातुको अवयव बनेर रहन्छ। यो नुम् आगम निर्निमित्तक विधि हो। अतः "निमित्तानपेक्षत्वमन्तरङ्गत्वम्, निमित्तापेक्षत्वं बहिरङ्गत्वम्" यो परिभाषा लगाएर नुम् अन्तरङ्ग हुन्छ र सबै कार्यभन्दा पहिले हुन्छ।

---

नन्दति । ननन्द । नन्दिता । नन्दिष्यति । नन्दतु । अनन्दत् । नन्देत् । नन्द्यात् । अनन्दीत् । अनन्दिष्यत् ॥ **अर्च** पूजायाम् ॥९॥ अर्चति ॥

---

**नन्द्धातु**– टु नदि धातुमा "उपदेशे०"ले इकारका इत्संज्ञा भएपछि लोप भयो टु को "आदिर्ञिटुडवः" ले इत्संज्ञा भयो नद् भयो "इदितो नुम् धातोः" ले नुम् भयो "व्यपदेशिवदेकस्मिन्" लगाएर अन्त्य अच् नका अकारदेखि पर न् भयो नन्द् धातु बन्यो । अब यही नन्द धातुदेखि सब लकार आउँछन् ।

**नन्दति**– नन्द् धातुदेखि "वर्तमाने लट्"ले लट् लकार भयो लका स्थानमा ति भयो सार्वधातुक संज्ञा, "कर्तरि शप्" ले शप् प्रत्यय शकारको "लशक्वतद्धिते०"ले पकारको "हलन्त्यम्"ले इत्संज्ञा लोप् भयो 'नन्द्+अ+ति', 'नन्दति' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध हुन्छन् ।

**ननन्द**– नन्द लिट्, तिप्, णल्, 'नन्द्+अ' द्वित्व 'नन्द+नन्द्+अ' हलादिशेष भयो, ननन्द सिद्ध भयो । अतुस्मा पनि 'नन्द्+नन्द्+अतुस्' भएपछि उत्तरखण्डको नन्द्को अकार संयोगको माझमा हुनाले एत्व र अभ्यास लोप भएन, ह्रस्व अकार भए पनि उपधामा नहुनाले "अत उपधायाः"ले वृद्धि भएन, हलादिशेष भयो, 'ननन्दतुः' सिद्ध भयो । यस्तै प्रकारले 'ननन्दुः' आदि रूप सिद्ध हुन्छन् । लिट्का सम्पूर्ण रूप–

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | ननन्द | ननन्दतुः | ननन्दुः |
| मध्यमपुरुष | ननन्दिथ | ननन्दथुः | ननन्द |
| उत्तमपुरुष | ननन्द | ननन्दिव | ननन्दिम |

नन्दिता । नन्दिष्यति । नन्दतु/तात् । अनन्दत् । नन्देत् । नन्द्यात् । यी लुट्, लृट्, लोट्, लङ्, विधिलिङ्, आशीर्लिङ्का प्रथमपुरुष एकवचनका रूपहरू दिग्दर्शनार्थ दिइएको हो । सर्वत्र गद नद धातुमा जस्तै कार्य हुन्छ र तद्वत् रूप पनि हुन्छन् । लुङ्मा भने नन्दका न को अकार गुरु हुनाले "अतो हलादेः" यो सूत्र लाग्दैन ।

**अनन्दीत्**– नन्द् धातुदेखि लुङ् लकार भयो अट् आगम भयो, 'अनन्द्+ल्' भयो, लका स्थानमा ति भयो, शप्लाई बाधेर च्लि, च्लिका स्थानमा सिच् भयो, सिच्को इट् आगम भयो, 'अनन्द+इस्+ति', तिका इकारको लोप् दीर्घ ईट्आगम 'अनन्द्+इस्+ईत्' भएपछि यहाँ अनन्द्मा नका ह्रस्व अकारलाई "ह्रस्वं लघु"ले पाएको लघुसंज्ञालाई बाधेर "संयोगे गुरु"ले गुरु संज्ञा भयो, अतः लघुसंज्ञक ह्रस्व अकार नभएकोले वैकल्पिक वृद्धि भएन । "इट ईटि"ले सकारको लोप भयो, "अकः सवर्णे०" ले दीर्घ भयो, 'अनन्दीत्' सिद्ध भयो । लुङ्का सबै रूप तल छन्–

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अनन्दीत्, | अनन्दिष्टाम्, | अनन्दिषुः |
| मध्यमपुरुष | अनन्दीः, | अनन्दिष्टम्, | अनन्दिष्ट |
| उत्तमपुरुष | अनन्दिषम्, | अनन्दिष्व, | अनन्दिष्म |

**अर्चेति**– अर्च् धातु पूजा गर्नु अर्थमा छ । अन्त्य अकारको "उपदेशेऽजनुनासिक इत्"ले इत्संज्ञा हुन्छ । (सेट् सकर्मक)

**अर्चति**– अर्च धातुदेखि "वर्तमाने लट्"ले लट्, प्रथमपुरुष एकवचन तिप्, शप्, भयो, 'अर्चति' सिद्ध भयो । यस्तै प्रकारले 'अर्चतः', 'अर्चन्ति' आदि रूप सिद्ध हुन्छन् ।

**४६३. तस्मान्नुड् द्विहलः ७ । ४। ७१ ॥**

द्विहलो धातोर्दीर्घीभूतादचः परस्य नुट् स्यात् । आनर्च । आनर्चतुः । अर्चिता । अर्चिष्यति । अर्चतु । आर्चत् । अर्चेत् । अर्च्यात् । आर्चीत् । आर्चिष्यत् ॥ व्रज गतौ ॥१०॥ व्रजति । वव्राज । व्रजिता । व्रजिष्यति । व्रजतु । अव्रजत् । व्रजेत् । व्रज्यात् ॥

**४६४. वदव्रजहलन्तस्याचः ७।२।३॥**

एषामचो वृद्धिः सिचि परस्मैपदेषु । अव्राजीत् ।

---

**तस्मादिति**– दुईहल् हुने धातुका दीर्घ भएका अकारदेखि पर रहेको वर्णको नुट्आगम होस् ।

**आनर्च**– अर्च् धातुदेखि लिट्, लकारका स्थानमा तिप्, णल्, 'अर्च्+अ' द्वित्व, हलादिशेष, "अत आदेः"ले अभ्यासका अकारको दीर्घ 'आ+अर्च्+अ', यहाँ "तस्मान्नुड् द्विहलः"ले नुट् भयो, 'आन्+अर्च्+अ', 'आनर्च' सिद्ध भयो । यस्तै अतुस् आदिमा पनि 'आनर्चतुः', 'आनर्चुः' आदि रूप हुन्छन् । अर्च धातुका लिट्का सबै रूप तल दिइन्छ –

आनर्च, आनर्चतुः, आनर्चुः । आनर्चिथ, आनर्चथुः आनर्च । आनर्च, आनर्चिव, आनर्चिम ।

**लुट्मा**- 'अर्चिता' इत्यादि, लृट्मा- 'अर्चिष्यति' इत्यादि **लोट्मा**- 'अर्चतु-तात्' आदि ।

**लङ्मा**- "आडजादीनाम्"ले आट् आगम, वृद्धि, 'आर्चत्' आदि, **विधिलिङ्मा**- 'अर्चेत्' आदि **आशीर्लिङ्मा**- 'अर्च्यात्' आदि, **लुङ्मा**- आट् वृद्धि 'आर्चीत्' आदि, **लृङ्मा**- पनि आट् वृद्धि, 'आर्चिष्यत्' आदि रूप हुन्छन् ।

**व्रजेति**– व्रज धातु हिड्नु अर्थमा छ । व्रजका अकारको इत्संज्ञा, लोप हुन्छ । (सेट् सकर्मक) लट्मा व्रजति आदि रूप हुन्छन् । लिट्मा व्रज् 'व्रज्+अतुस्' यहाँ संयुक्त हल्मध्यस्थ अकार हुनाले "अत एकहल्मध्ये०" लाग्दैन । अतः वव्रजतुः हुन्छ । व्रज धातुका लिट्का रूप–

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | वव्राज | वव्रजतुः | वव्रजुः |
| मध्यमपुरुष | वव्रजिथ | वव्रजथुः | वव्रज |
| उत्तमपुरुष | वव्राज/वव्रज | वव्रजिव | वव्रजिम |

व्रजधातु- लुङ्बाहेक अन्यत्र नन्द धातु जस्तै हो । लुङ्मा फरक छ ।

**वदेति**– वद धातु व्रज धातु र हलन्त धातुका अच्का स्थानमा वृद्धि होस्, परस्मैपद पर भएको सिच् पर भएमा ।

**अव्राजीत्**– व्रज् धातुदेखि लुङ्, अट्, 'अव्रज्+ल्' पूर्ववत् प्रक्रिया भएर 'अव्रज्+इस्+ईत्' भएपछि, "अतो हलादेः"ले पाएको वैकल्पिक वृद्धिलाई बाधेर "वदव्रजहलन्तस्याचः"ले 'व्र'का अकारका स्थानमा वृद्धि हुँदा आकार भयो, 'अव्राजिस्+ईत्', "इट ईटि"ले सलोप भयो, "सिज्लोप एकादेशे०" लाएर "अकः सवर्णे०"ले दीर्घ भयो, 'अव्राजीत्' सिद्ध भयो । यस्तै 'अव्राजिष्टाम्' आदि रूप पनि जान्नु । लुङ्का सबै रूप तल दिइन्छ-

| व्रज लुङ् | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अव्राजीत्, | अव्राजिष्टाम्, | अव्राजिषुः । |
| | मध्यमपुरुष | अव्राजीः, | अव्राजिष्टम्, | अव्राजिष्ट । |
| | उत्तमपुरुष | अव्राजिषम्, | अव्राजिष्व | अव्राजिष्म । |

अव्रजिष्यत् ॥ कटे वर्षावरणयोः ॥११॥ कटति । चकाट । चकटतुः । कटिता । कटिष्यति । कटतु । अकटत् । कटेत् । कटचात् ॥

**४६५. ह्मचन्तक्षणश्वसजागृणिश्व्येदिताम् ७।२।५॥**

हमयान्तस्य क्षणादेर्ण्यन्तस्य श्वयतेरेदितश्च वृद्धिर्नेडादौ सिचि । अकटीत् ।

---

**अव्रजिष्यत्**- व्रज् लृङ्, अट् आगम, तिप्, स्यप्रत्यय, इट्, षत्व तिका इकारको लोप भयो, 'अव्रजिष्यत्' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध गर्नु ।

उपसर्गयोगमा- प्रव्रजति/परिव्रजति (संन्यास लिन्छ) । अनुव्रजति (पछिलाग्छ ।)

**कट इति**- कटे धातु वर्षनु र ढाक्नु अर्थमा छ । (सेट् अकर्मक सकर्मक दुवै) एकार इत्संज्ञा भएर लोप हुन्छ, त्यसको फल लुङ्मा वृद्धिनिषेध हो । लट्का रूप 'कटति' आदि पूर्ववत् हुन्छन्-

**चकाट**- कट्धातुदेखि लिट् लकार, तिप्, "परस्मैपदानां०"ले तिका स्थानमा णल् 'कट्+अ', द्वित्व 'कट्+कट्+अ' हलादिशेष 'ककट्+अ', 'चुत्व+चकट्+अ', वृद्धि, 'चकाट' सिद्ध भयो-।

आदिमा चवर्ग आदेश भएकोले एत्व अभ्यासलोप हुँदैन, 'चकटतुः' हुन्छ । सबै रूप गद धातुमा जस्तै हुन्छन् । लिट् लकारका सबै रूप तल दिइन्छ ।

| **कट् लिट्** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | चकाट | चकटतुः | चकटुः |
| | मध्यमपुरुष | चकटिथ | चकटथुः | चकट |
| | उत्तमपुरुष | चकाट/चकट | चकटिव | चकटिम |

लुट्,लृट्आदि लकारमा कटिता, कटिष्यति, आदि रूप नद्धातुमा जस्तै हुन्छन् । लुङ्मा फरक छ ।

**ह्म्यन्तेति**- हकार, मकार, यकार अन्तमा हुने धातु, क्षण्, श्वस्, जागृ, धातु, ण्यन्त धातु, श्वि धातु र एकारको इत्संज्ञा हुने धातुका स्थानमा वृद्धि नहोस्, इट् आदिमा हुने सिच् पर भएमा ।

**यो सूत्रमा बताइएका धातुहरू-**

हकारान्त- मह पूजायाम् (पूजा गर्नु) अमहीत् ।

मकारान्त- क्रमु पादविक्षेपे (हिड्नु) अक्रमीत् ।

यकारान्त- हय गतौ (हिड्नु) अहयीत् ।

क्षणु हिंसायाम् (हिंसा गर्नु) अक्षणीत् ।

जागृ निद्राक्षये (जाग्नु) अजागरीत् ।

ण्यन्त धातुको वेदमा "नोनयतिध्वनयति०"ले चङ् निषेध भएमा मात्र इट् आदिमा हुने सिच् पाइन्छ । जस्तै ऊन परिहाणे धातुको 'औनयीत्' रूप हुन्छ ।

टुओश्वि गतिवृद्धयोः (हिड्नु र बढ्नु) अश्वयीत् ।

एकारान्त धातुको उदाहरण यही कट् धातु हो ।

**अकटीत्**- कट् धातुदेखि लुङ् लकार, अट्आगम, 'अकट्+ल्' लकारका स्थानमा तिप् च्लि प्रत्यय, सिच् आदेश, पूर्ववत् 'अकट्+इस्+ईत्' भएपछि, "वदव्रज०"ले पाएको वृद्धि "नेटि"ले निषेध भयो, पुनः "अतो हलादेर्लघोः"ले वैकल्पिक वृद्धि पाएकोमा यो कट्धातु एकारको इत्संज्ञा हुने छ र "ह्म्यन्तक्षण०"ले निषेध भयो, 'अकटिस्+ईत्' सिच् लोप, दीर्घ, भयो, 'अकटीत्' सिद्ध भयो ।

अकटिष्यत् ॥ **गुपू रक्षणे** ॥१२॥

**४६६. गुपूधूपविच्छिपणिपनिभ्य आयः ३।१।२८॥**

एभ्य आयः प्रत्ययः स्यात् स्वार्थे ॥

**४६७. सनाद्यन्ता धातवः ३।१।३२॥**

सनादयः कमेर्णिङन्ताः प्रत्यया अन्ते येषां ते धातुसंज्ञकाः । धातुत्वाल्लडादयः । गोपायति ॥

---

**अकटिष्यत्**– कट् धातुदेखि लृङ्, अट्आगम, स्य, इट्, तिका इकारको लोप, षत्व, 'अकटिष्यत्' सिद्ध भयो ।

**गुपू रक्षणे**– **गुपू** धातु रक्षा गर्नु अर्थमा छ । ऊकारको इत्संज्ञा हुन्छ । (सेट् सकर्मक)

**गुपू इति**– गुपू धातु, धूप धातु विच्छ धातु, पण धातु, पन धातु यी धातुदेखि आय प्रत्यय होस् स्वार्थमा ।

णिच् प्रत्यय प्रेरणा अर्थमा हुन्छ । सन् प्रत्यय इच्छाअर्थमा हुन्छ । यङ्प्रत्यय पौनः पुन्य र अतिशय अर्थमा विधान गरिन्छ र त्यसले धातुको अर्थ फरक हुन्छ । जस्तै भवति (हुन्छ), भावयति (हुन प्रेरणा गर्छ), बुभूषति (हुन इच्छा गर्छ), इत्यादि अर्थ हुन्छ, तर यो आयप्रत्यय स्वार्थमा (आफ्नै अर्थमा) विधान गरिएको हुनाले धातुको अर्थ फरक पर्दैन । जस्तै- गोपायति (रक्षा गर्छ) । आय प्रत्यय निर्मिमित्त विधि हो । अतः "निमित्तानपेक्षत्वमन्तरङ्गत्वम्" यो परिभाषाले अन्तरङ्ग हुन्छ र सबैभन्दा पहिले आयप्रत्यय हुन्छ ।

**सनाद्यन्तेति**– सन् प्रत्ययदेखि लिएर कमेर्णिङ्सम्मका प्रत्यय जसका अन्तमा छन्, ती शब्द स्वरुप धातु संज्ञक होऊन् । सनादि प्रत्यय यस कारिकामा बताइएका छन्–

**"सन्क्यच्काम्यच्क्यङ्क्यषोऽथाचारक्विब् णिज्यङौ तथा ॥**
**यगाय ईयङ् णिङ् चेति द्वादशामी सनादयः ॥"**

सन् प्रत्यय, क्यच् प्रत्यय, काम्यच् प्रत्यय, क्यङ् प्रत्यय, क्यष् प्रत्यय अनि आचारअर्थमा विधान गरिएको क्विप् प्रत्यय, णिच् प्रत्यय, यङ् प्रत्यय यक् प्रत्यय, आय् प्रत्यय, ईयङ् प्रत्यय, णिङ् प्रत्यय यति १२ प्रत्ययहरू सनादि हुन् । यी प्रत्ययहरू भिन्न-भिन्न सूत्रले विधान गरिन्छन् ।

**धातुत्वादिति**– धातुसंज्ञा भएको हुनाले "लः कर्मणि०" यो सूत्र लगाएर लट् आदि लकार हुन्छन् ।

**गोपायति**– गुप् धातुदेखि लट्को विवक्षामा "गुपूधूप०"ले आय प्रत्यय भयो, 'गुप्+आय' भयो, आयलाई "आर्धधातुकं शेषः"ले आर्धधातुक संज्ञा भएपछि, "पुगन्तलघूपधस्य च"ले गुप्का उपधाका स्थानमा वृद्धि भयो, 'गोपाय' भयो, 'गोपाय'यसलाई "सनाद्यन्ता धातवः"ले धातुसंज्ञा भयो, "लः कर्मणि०"ले कर्तामा सबै लकार पायो, "वर्तमाने लट्"ले वर्तमान कालमा लट् लकार भयो, तिप्, शप्, "अतो गुणे"ले पररूप भयो, 'गोपायति' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध हुन्छन् ।

| गुप् लट् | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | गोपायति | गोपायतः | गोपायन्ति |
| | मध्यमपुरुष | गोपायसि | गोपायथः | गोपायथ |
| | उत्तमपुरुष | गोपायामि | गोपायावः | गोपायामः । |

सार्वधातुक लकार र आर्धधातुक लकारको वर्गीकरण माथि भूधातुको रूपको प्रयोग विधिमा गरिएको छ ।

**४६८. आयादय आर्धधातुके वा ३।१।३१॥**

आर्धधातुकविवक्षायामायादयो वा स्युः । **वा.** (कास्यनेकाच आम् वक्तव्यो लिटि ।) आस्कासोराम्विधानान्मस्य नेत्वम् ।

**४६९. अतो लोपः ६।४।४८॥**

आर्धधातुकोपदेशे यददन्तं तस्यातो लोप आर्धधातुके ॥

**४७०. आमः २।४।८१॥**

आमः परस्य लुक् ॥

**४७१. कृञ् चानुप्रयुज्यते लिटि ३।१।४०॥**

आमन्ताल्लिट्पराः कृभ्वस्तयोऽनुप्रयुज्यन्ते । तेषां द्वित्वादि ॥

**४७२. उरत् ७।४।६६॥**

अभ्यासऋवर्णस्यात् स्यात् प्रत्यये । रपरः ।

---

**आयादय इति–** आर्धधातुकसंज्ञक प्रत्ययको विवक्षामा आय, ईयङ्, णिङ् प्रत्यय विकल्पले होऊन् ।

**(वा.) कास्येति–** कास् धातु र अनेकाच् धातुदेखि लिट्को विवक्षामा आम् होस् भन्नु ।

**आस्कासोरिति–** आस् धातु र कास् धातुदेखि आम् प्रत्यय विधान गर्नका सामर्थ्यले आम्का मकारको इत्संज्ञा हुँदैन ।

कास् धातुदेखि यही वार्तिकले र आस् धातुदेखि "दयायासश्च"ले आम्प्रत्यय हुन्छ ।

आम् प्रत्ययका मकारको इत्संज्ञा हुँदैन भन्ने उपपत्ति उक्त दुई सूत्र र वार्तिकको आशयलाई लिएर गरिएको छ ।

आम् प्रत्ययका मकारको इत्संज्ञा, लोप गरेपछि मित् हुन्छ र "मिदचोऽन्त्यात्परः" लगाएर अन्तिम अच्देखि पर हुन्छ । आस्मा आकारदेखि पर 'आ+आ+स्' र कास् धातुमा पनि आकारदेखि पर 'का+आ+स्' यस्तो हुन्छ । दीर्घ भएपछि, आस्, कास् जस्ताको तस्तै हुन्छ र आम् प्रत्यय गर्नु व्यर्थ हुन्छ । "व्यर्थं सत् किञ्चिज्ज्ञापयति", (व्यर्थ भएर केही जनाउँछ ?) यो परिभाषा अनुसार के जनायो त ? "आम्प्रत्ययान्ते वर्तमानस्य मस्य नेत्त्वम्", (आम्प्रत्ययका अन्तमा रहेका मकारको इत्संज्ञा हुँदैन ।) मकारको इत्संज्ञा नभएपछि "मिदचो०" लागेन । प्रत्यय हुनाले स्वतः पर भयो । 'आसाम्', 'कासाम्' भयो । आम्विधान सफल भयो ।

वक्तुमिच्छा विवक्षा (भन्ने इच्छा), अर्थात् अर्धधातुक लकारको विधान गर्ने इच्छा "आर्धधातुकविवक्षायाम्" को अर्थ हो । "गुपूधूप०"ले पनि विवक्षामा नै आम्प्रत्यय हुन्छ भन्ने कुरा देखाइएको छ । अतः सर्वप्रथम सार्वधातुक विवक्षामा नित्य, आय र आर्धधातुक विवक्षामा वैकल्पिक आय प्रत्यय हुन्छ, अनि लट्आदि लकार हुन्छन् ।

**अत इति–** आर्धधातुकसंज्ञक प्रत्ययको उपदेशमा जो अदन्त अङ्ग छ, त्यसको अवयव अकारको लोप होस्, आर्धधातुक संज्ञक प्रत्यय पर भएमा । अकारान्त गोपाय प्रत्ययविधान गरेर अकारको लोप गर्नुमा वेदमा स्वरभेदको फल छ ।

**आम इति–** आमदेखि पर रहेको लिट्को लुक् होस् ।

**कृञ्चेति–** आमन्तदेखि लिट् पर भएका कृधातु, भूधातु र अस्धातु पछि प्रयोग गरिन्छन् । कृञ्यो प्रत्याहार हो त्यसमा कृ, भू, अस्, धातु पर्छन् । तिनीहरूको द्वित्व आदि हुन्छ ।

**उरदिति–** अभ्यासमा रहेका ऋवर्णका स्थानमा ह्रस्व अकार होस् । ऋकारका स्थानमा अकार आदेश हुँदा "उरण् रपरः" लगाएर रेफ र लकार पर भएको हुन्छ ।

हलादिः शेष । वृद्धिः । गोपायाञ्चकार । द्वित्वात्परत्वाद्यणि प्राप्ते–

**४७३. द्विर्वचनेऽचि १।१।५९॥**

द्वित्वनिमित्तेऽचि अच आदेशो न द्वित्वे कर्तव्ये । गोपायाञ्चक्रतुः ॥

---

**गोपायाञ्चकार**– गुप् धातुदेखि "गुपूधूप०"ले नित्य आय प्रत्यय पाएकोमा लिट्को विवक्षामा "आयादय आर्धधातुके वा"ले वैकल्पिक आय प्रत्यय भयो, आय प्रत्ययलाई आर्धधातुकसंज्ञा भयो, "पुगन्तलघूपधस्य च"ले गुका उकारका स्थानमा गुण भएर गोपाय धातु बन्यो, गोपायधातुदेखि लिट् लकार आयो, 'गोपाय+ल्', "कास्यनेकाच०" यस वार्तिकले आम् प्रत्यय भयो, 'गोपाय+आम्+ल्' भयो, आम्लाई "आर्धधातुकसंज्ञा भएपछि, "अतो लोपः०"ले गोपायका अकारको लोप भयो, "आमः"ले लिट्को लुक् भयो, 'गोपायाम्' भयो, "कृञ्चानु०"ले लिट्लकार पर हुने कृधातुको अनुप्रयोग हुँदा 'गोपायाम्+कृ+ल्' भयो, लकारका स्थानमा तिप् तिप्का स्थानमा णल् भयो, 'गोपायाम्+कृ+अ', "लिटि धातोः"ले द्वित्व 'गोपायाम्+कृ+कृ+अ', "उरत्" ले "उरण् रपरः" लाएर अभ्यासका कृका ऋकारका स्थानमा अर् भयो, 'गोपायाम्+कर्+कृ+अ' "हलादिः शेषः"ले रेफको लोप 'गोपायाम्+क+कृ+अ', "कुहोश्चुः"ले ककारका स्थानमा चकार "अचो ञ्णिति"ले वृद्धि, 'गोपायाम्+चकार' भयो । मकारका स्थानमा "मोऽनुस्वारः"ले अनुस्वार वैकल्पिक परसवर्ण भयो, 'गोपायाञ्चकार' सिद्ध भयो । परसवर्ण नभएको पक्षमा "गोपायांचकार"[७८] पनि हुन्छ ।

**द्वित्वात् परत्वादिति**– द्वित्व गर्ने सूत्रभन्दा पर हुनाले (गोपायाम् कृ अतुस्मा) "इको यणचि"ले यण् पाएमा-

**द्विर्वचन इति**– द्वित्वनिमित्तक अच् आदिमा हुने प्रत्यय पर भएमा अच्का स्थानमा आदेश नहोस् द्वित्व गर्नु परेमा ।

**गोपायाञ्चक्रतुः**– पूर्ववत् प्रक्रिया भएर 'गोपायाम्+कृ+ल्' भयो, लकारका स्थानमा तस्, तस्का स्थानमा अतुस् भएपछि 'गोपायाम्+कृ+अतुस्' यहाँ "सार्वधातुकार्धधातुकयोः"ले गुण पायो, "क्ङिति च"ले अतुस् कित् हुनाले निषेध भयो । अनि "लिटिधातोः"ले द्वित्व र "इको यण चि"ले यण् दुवै पाएमा द्वित्व गर्ने सूत्र "लिटि धातोः०" भन्दा "इकोयणचि" पर हुनाले द्वित्वलाई बाधेर यण् पाएमा "द्विर्वचनेऽचि"ले द्वित्वनिमित्तक अजादि प्रत्यय अतुस् पर छ, द्वित्व गर्नु परेको छ र यण्को निषेध भयो, पहिले द्वित्व भयो, 'गोपायाम्+कृ+कृ+अतुस्' भयो, अभ्यासकार्य भयो, 'गोपायाम्+चकृ+अतुस्' भयो, द्वित्व, गर्नु परेमा मात्र यण् निषेध गरेको हुनाले द्वित्व भैसकेपछि यण् भयो, 'गोपायाम्+चक्रतुः' भयो, मकारका स्थानमा अनुस्वार परसवर्ण भयो, सकारको रुत्व, विसर्ग भयो, 'गोपायाञ्चक्रतुः' सिद्ध भयो ।

"द्विर्वचनेऽचि"ले यण्लाई द्वित्व, गर्नुभन्दा पहिले नहोस् भनेर निषेध गर्दछ । द्वित्व भएपछि निषेध गर्दैन, यो कुरा "द्वित्वे कर्तव्ये" यो भनाइबाट सिद्ध हुन्छ ।

**गोपायाञ्चक्रुः**– पूर्ववत् प्रक्रियाद्वारा 'गोपायाम्+कृ+उस्' भएपछि, यहाँ द्वित्वभन्दा पहिले "इको यणचि"ले यण् पाएकोमा "द्विर्वचनेऽचि"ले निषेध भयो, द्वित्व, अभ्यासकार्य गरेपछि, यण् भयो, मकारको अनुस्वार परसवर्ण भएर 'गोपायाञ्चक्रुः' सिद्ध भयो ।

---

७८ आम्देखि पर रहेको लिट् जसको लुक् भयो, त्यो कृत् हो । किनभने "धातोः"को अधिकार तृतीयाध्यायको समाप्ति सम्म छ । "परोक्षे लिट्" त्यसभित्र पर्दछ । "प्रत्ययलोपे०" लगाएर 'गोपायाम्' यो कृदन्त छ र प्रातिपदिकसंज्ञा हुन्छ र सु आउँछ । 'गोपायाम्' यो मान्त कृत् हुनाले "कृन्मेजन्तः"ले अव्ययसंज्ञा हुन्छ । सुको लुक् हुन्छ, 'गोपायाम्' यसलाई प्रत्ययलक्षण पदसंज्ञा हुन्छ । अतः मकार पदान्त हुनाले "मोऽनुस्वारः"ले अनुस्वार र "वा पदान्तस्य"ले वैकल्पिक परसवर्ण हुन्छ ।

**४७४. एकाच उपदेशेऽनुदात्तात् ७।२।१०॥**

उपदेशे यो धातुरेकाजनुदात्तश्च तत आर्धधातुकस्येण्न ।

ऊदृदन्तैर्यौतिरुक्ष्णुशीङ्स्नुक्षुश्विडीङ्श्रिभिः ।

वृङ्वृञ्भ्यां च विनैकाचोऽजन्तेषु निहताः स्मृताः ॥

कान्तेषु शक्लेकः । चान्तेषु पच्-मुच्-रिच्-वच्-विच्-सिचः षट् । छान्तेषु प्रच्छचेकः । जान्तेषु त्यज्- निजिर्-भज्-भञ्ज्-भुज्-भ्रस्ज्-मस्ज्-यज्-युज्-रुज्-रञ्ज्-विजिर्-स्वञ्ज्-सञ्ज्-सृजः पञ्चदश । दान्तेषु अद्-क्षुद्-खिद्-छिद्-तुद्-नुद्-पद्य-भिद्-विद्य-विनद्-विन्द्-शद्-सद्-स्विद्य-स्कन्द्-हदः षोडश । धान्तेषु क्रुध्-क्षुध्-बुध्य-बन्ध्-युध्-रुध्-राध्-व्यध्-साध्-शुध्-सिध्या एकादश । नान्तेषु मन्यहनौ द्वौ । पान्तेषु आप्-

---

थल्मा 'गोपायाम्+चकृ+थ' भएपछि, थल्को इट् आगम पाएकोमा निषेध गर्नको निमित्त "एकाच उपदेशेऽनुदात्तात्" यो सूत्रको व्याख्यामा [७७]अनुदात्त धातुको परिगणन गरिएको छ ।

**एकाच इति-** उपदेशमा जो धातु एकाच् र अनुदात्त पनि छ त्यसदेखि पररहेका आर्धधातुकसंज्ञकप्रत्ययको इट् नहोस् ।

अजन्त अनुदात्त धातुहरू-

**ऊदिति-** दीर्घ ऊकारान्त र दीर्घ ॠकारान्त धातु यु, रु, क्ष्णु, शीङ्, स्नु, नु, क्षु, श्वि, डीङ्, श्रि, वृङ्, वृञ् धातुलाई छोडेर एकअच् हुने अरू अजन्त धातु सबै अनुदात्त मानिएका छन् ।

हलन्त अनुदात्त धातुहरू-

**कान्तेति-** ककारान्त धातुमा शक्लृ एक धातु मात्र अनुदात्त छ ।

**चान्तेति-** चकारान्त धातुमा पच्,मुच्,रिच्,वच्,विच्,सिच् यी छ धातु, अनुदात्त हुन् ।

**छान्तेति-** छकारान्त धातुमा प्रच्छ् धातु अनुदात्त हो ।

**जान्तेति-** जकारान्त धातुमा त्यज्,निजिर्,भज्,भञ्ज्,भुज्,भ्रस्ज्,मस्ज्,यज्,युज्, रुज्,रञ्ज्,विजिर्,सञ्ज्,स्वञ्ज्,सृज् यी १५ धातु अनुदात्त छन् ।

**दान्तेति-** दकारान्त धातुमा अद्, क्षुद्, खिद्, छिद्, तुद्, नुद्, पद्य, भिद्, विद्य, विनद्, विन्द्, शद्, सद्, स्विद्य, स्कन्द्, हद् यी १६ धातु अनुदात्त हुन्

**धान्तेति-** धकारान्त धातुमा क्रुध्, क्षुध्, बुध्य, बन्ध्, युध्, रुध्, राध्, व्यध्, शुध्, साध्, सिध्य यी ११ धातु अनुदात्त छन् ।

**नान्तेति-** नकारान्त धातुहरूमा मन्य धातु र हन् धातु अनुदात्त छन् ।

**पान्तेति-** पकारान्त धातुमा आप्, क्षुप्, क्षिप्, तप्, तिप्, तृप्य, दृप्य, लिप्, लुप्, वप्, शप्, स्वप्, सृप् यी १३ धातु अनुदात्त छन् ।

---

७७ अनुदात्त धातु र अनुदात्तको इत्संज्ञा हुने धातु यी अलग अलग कुरा हुन् । अनुदात्तधातुदेखि पर रहेका प्रत्ययको "आर्धधातुकस्येड् वलादेः"ले इट् पाएको "एकाच उपदेशेऽनुदात्तात्"ले निषेध हुन्छ र तिनीहरूलाई अनिट्धातु भनिन्छ । उदात्त धातुलाई सेट् भनिन्छ ।

धातुपाठमा धातुहरू उदात्त र अनुदात्त दुई प्रकारका छन् । धातुसँग रहेको इत्संज्ञा भएर लोप हुने स्वर- उदात्त, अनुदात्त, स्वरित तीन प्रकारको छ । उदात्त स्वरको इत्संज्ञा हुने धातुदेखि परस्मैपद, अनुदात्त स्वरको इत्संज्ञा हुने धातुदेखि आत्मनेपद, स्वरित स्वरको इत्संज्ञा हुने धातुदेखि उभयपद हुन्छ यो विषय स्पष्टै छ ।

छुप्-क्षिप्-तप्-तिप्-तृप्य-दृप्य-लिप्-लुप्-वप्-शप्-स्वप्-सृपस्त्रयोदश । भान्तेषु यभ्-रभ्-लभस्त्रयः । मान्तेषु गम्-नम्-यम्-रमश्चत्वारः । शान्तेषु क्रुश्-दंश-दिश्-दृश-मृश्-रिश्-रुश्-लिश्-विश्-स्पृशो दश । षान्तेषु कृष्-त्विष्-तुष्-द्विष्-दुष्-पुष्य-पिष्-विष्-शिष्-शुष्-श्लिष्या एकादश । सान्तेषु घस्-वसती द्वौ । हान्तेषु दह्-दिह्-दुह्-नह्-मिह्-रुह्-लिह्-वहोऽष्टौ ।

**"अनुदात्ता हलन्तेषु धातवस्त्र्यधिकं शतम् ।"**

गोपायाञ्चकर्थ । गोपायाञ्चक्रथुः । गोपायाञ्चक्र । गोपायाञ्चकार । गोपायाञ्चकर । गोपायाञ्चकृव । गोपायाञ्चकृम ॥

---

**भान्तेति**– भकारान्त धातुमा यभ्, रभ्, लभ् तीन धातु अनुदात्त छन् ।

**मान्तेति**– मकारान्त धातुमा गम्, नम्, यम्, रम् चार धातु अनुदात्त छन् ।

**शान्तेति**– तालव्य शकारान्त धातुमा क्रुश्, दंश्, दिश्, दृश्, मृश्, रिश्, रुश्, लिश्, विश्, स्पृश् यी दश धातु अनुदात्त छन् ।

**षान्तेति**– मूर्धन्य षकारान्त धातुमा कृष्, त्विष्, तुष्, द्विष्, दुष्, पुष्य्, पिष्, विष्, शिष्, शुष्, श्लिष् एघार धातु अनुदात्त छन् ।

**सान्तेति**– दन्त्य सकारान्त धातुमा घस् र वसति (भ्वादिको वस्धातु) दुई अनुदात्त छन् ।

**हान्तेति**– हान्त धातुमा दह्, दिह्, दुह्, नह्, मिह्, रुह्, लिह्, वह् यी ८ धातु अनुदात्त छन् ।

**अनुदात्तेति**– हलन्त धातुमा अनुदात्त धातु उपर्युक्त १०३ छन् । यहाँ पद्य आदि कतिपय धातुमा यकारान्त निर्देश गरिएको दैवादिक (श्यन् प्रत्यय हुने) धातु बुझाउन हो । त्यस्तै विनद्मा श्नम्ले रुधादिको विद्धातु, विन्द्ले तुदादिको विद्धातु बुझाउँछ (किनभने तुदादिको विद् धातुको नुम् हुन्छ) अनि 'वसति'ले वसति रूप हुने भ्वादिको वस् धातु बुझाउँछ (वस आच्छादनेलाई) लिँदैन, अरू धातु स्पष्ट छन् । यी सबै धातु लघुकौमुदीमा छैनन्, पाणिनिमुनिप्रणीत धातुपाठ हेरेर अर्थ बुझ्न सकिन्छ ।

**गोपायाञ्चकर्थ**– पूर्ववत् 'गोपायाम्+चकृ+थ' भएपछि, "आर्धधातुकस्येट्०"ले इट् पाएकोमा उपदेशमा एकाच् अनुदात्त धातु हुनाले "एकाच उपदेशेऽनुदात्तात्"ले थल्को इट् आगम् निषेध भयो । कृको ऋकारका स्थानमा अर्गुण भयो, मकारका स्थानमा अनुस्वार परसवर्ण भयो, 'गोपायाञ्चकर्थ' सिद्ध भयो ।

**गोपायाञ्चक्रथुः, गोपायाञ्चक्र**– यी दुई द्विवचन अथुस् र बहुवचन अका रूप हुन् । यहाँ "असंयोगात्०"ले कित्व भएर गुण भएन, यण् भयो ।

**गोपायाञ्चकार/गोपायाञ्चकर**– 'गोपायाम्+चकृ+अ' भएपछि, "णलुत्तमो वा"ले वैकल्पिक णित्व भएकोले णित्व भएको पक्षमा "अचो ञ्णिति"ले वृद्धि मकारको अनुस्वार परसवर्ण भयो, 'गोपाञ्चकार' सिद्ध भयो, णित् नभएको पक्षमा गुण भयो, मकारको अनुस्वार परसवर्ण भयो, 'गोपायाञ्चकर' सिद्ध भयो, यसरी यी दुई रूप भए ।

**गोपायाञ्चकृव**– 'गोपायाम्+चकृ+व' भएपछि, इट्निषेध, कित्त्वाद् गुणनिषेध, अनुस्वार परसवर्ण भयो, 'गोपायाञ्चकृव' सिद्ध भयो ।

**गोपायाञ्चकृम**– यसमा पनि त्यस्तै प्रक्रिया हुन्छ । कृधातुको अनुप्रयोगमा यी रूप भए ।

गोपायाम्बभूव । गोपायामास । जुगोप । जगुपतुः । जुगुपुः ॥

**४७५. स्वरतिसूतिसूयतिधूञूदितो वा ७।२।४४॥**

स्वरत्यादेरूदितश्च परस्य वलादेरार्धधातुकस्येड् वा स्यात् । जुगोपिथ, जुगोप्थ ।

---

अब भू धातुको अनुप्रयोगमा पनि रूप सिद्धि प्रक्रियाको दिग्दर्शन गराइन्छ ।

**गोयायाम्बभूव-** गोपायाम् धातुदेखि "कृञ्चानुप्रयुज्यते०"ले लिट् पर भएको भू धातुको अनुप्रयोग भयो, 'गोपायाम्+भू+ल्' लकारका स्थानमा, तिप्, णल्, वुक् आगम, द्वित्व, हलादि शेष, ह्रस्व, अत्व, जश्त्व यी कार्य भूधातुमा झैं भएपछि, गोपायाम्का मकारका स्थानमा अनुस्वार परसवर्ण भयो, 'गोपायाम्बभूव' सिद्ध भयो ।

**गोपायाम्बभूवतुः-** द्विवचनमा 'गोपायाम्+भू+अतुस्' यहाँ पनि सबै कार्य पूर्ववत् भूधातुमा जस्तै हुन्छन्, अन्तमा अनुस्वार परसवर्ण हुन्छ र 'गोपायाम्बभूवतुः' सिद्ध हुन्छ । यस्तै प्रकारले अरू रूप पनि हुन्छन्–

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | गोपायाम्बभूव | गोपायाम्बभूवतुः | गोपायाम्वभूवुः |
| मध्यमपुरुष | गोपायाम्बभूविथ | गोपायाम्बभूवथुः | गोपायाम्वभूव |
| उत्तमपुरुष | गोपायाम्बभूव | गोपाम्बभूविव | गोपायाम्बभूविम |

अस् धातुको अनुप्रयोगमा पनि संक्षिप्त साधनप्रक्रिया र रूपहरूको उल्लेख तल गरिन्छः–

**गोपायामास–** गोपायाम् यसदेखि "कृञ्चानुप्रयुज्यते०"ले लिट् पर हुने अस् धातुको अनुप्रयोग भयो, अनुप्रयोगसामर्थ्यात् अस्को भू आदेश भएन, 'गोपायाम्+अस्+ल्' लकारका स्थानमा तिप्, णल् भयो, 'गोपायाम्+अस्+अ' भयो, द्वित्व, हलादिशेष, अभ्यासको "अकः सवर्णे०"ले दीर्घ सबै कार्य अत् धातुमा जस्तै भयो, 'गोपायामास' सिद्ध भयो । यसैगरी सबै रूपमा अत्धातुमा जस्तै साधनप्रक्रिया हुन्छ । यसका रूपः–

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | गोपायामास | गोपायामासतुः | गोपायामासुः |
| मध्यमपुरुष | गोपायामासिथ | गोपायामासथुः | गोपायामास |
| उत्तमपुरुष | गोपायामास | गोपायामासिव | गोपायामासिम |

**जुगोप–** "आयादय आर्धधातुके वा"ले आय प्रत्यय नभएको पक्षमा गुप् धातु यथावत् छँदैछ । गुप् धातुदेखि लिट्,तिप्,णल्, 'गुप्+अ' भयो, द्वित्व, हलादिशेष, 'गुगुप्+अ', "कुहोश्चुः"ले अभ्यासको चुत्व 'जुगुप्+अ' "पुगन्तलघूपधस्य च"ले लघूपध गुण भयो, 'जुगोप' सिद्ध भयो ।

**जुगुपतुः–** द्विवचनमा पूर्ववत् 'जुगुप्+अतुस्' भएपछि, अतुस् कित् हुनाले लघूपध गुण भएन, 'जुगुपतुः' सिद्ध भयो, यस्तै प्रकारले उस्मा पनि 'जुगुपुः' हुन्छ ।

**स्वरतीति–** भ्वादिको स्वृधातु अदादिको सूधातु, दिवादिको सूधातु, धूञ्धातु र दीर्घ ऊकारको इत्संज्ञा हुने धातुदेखि पर रहेका वल् आदिमा हुने आर्धधातुकसंज्ञक प्रत्ययको इट् आगम विकल्पले होस् ।

**जुगोपिथ/जुगोप्थ–** थल्मा 'गुप्+थ' यहाँ द्वित्व र पूर्ववत् अभ्यासकार्य भएपछि 'जुगोप्+थ' यहाँ थलको "आर्धधातुकस्येड्०"ले पाएको नित्य इट् आगमलाई बाधेर गुप्धातु दीर्घ ऊकारको इत्संज्ञा हुने हुनाले "स्वरतिसूति०"ले वैकल्पिक इट् आगम भयो, उपधागुण भयो, 'जुगोपिथ' सिद्ध भयो, इट् आगम नभएका पक्षमा पनि गुण भयो, 'जुगोप्थ' दुवै रूप सिद्ध भए ।

अथुस् र अमा पनि कित्व भएकोले गुणनिषेध हुन्छ । 'जुगुपथुः', 'जुगुप' यी रूप हुन्छन् ।

गोपायिता, गोपिता, गोप्ता । गोपायिष्यति ।

प्रथमपुरुषको णल्‌मा जस्तै उत्तमपुरुष णल्‌मा पनि 'जुगोप' हुन्छ व र ममा थल्‌मा जस्तै वैकल्पिक इट् आगम 'जुगुपिव', 'जुगुप्व', 'जुगुपिम', 'जुगुप्म' दुई दुई रूप हुन्छन् ।

लुट्‌को तासि प्रत्यय आर्धधातुक हुनाले त्यसको विवक्षामा आय प्रत्यय विकल्पले हुन्छ र गोपाय धातु बन्दछ ।

**गोपायिता**– गोपाय धातुदेखि लुट्, तिप्, तासिप्रत्यय भएपछि, यो गुप्‌धातु नभएर गोपायधातु हुनाले "स्वरतिसूति०" लागेन, "आर्धधातुकस्येड्०"ले नित्य इट् आगम भयो, अकारको "अतो लोपः"ले लोप भयो, 'गोपायितास्ति' यहाँ तिका स्थानमा डा आदेश टिको लोप भयो । 'गोपायिता' सिद्ध भयो । यस्तै प्रकारले गोपायितारौ, गोपायितारः आदि रूप सिद्ध हुन्छन् ।

**गोपिता**– आय प्रत्यय नभएमा गुप् धातुदेखि लुट्, तिप्, तासि प्रत्यय भएपछि, तासिको "स्वरतिसूति०"ले वैकल्पिक इट् आगम, गुण, 'गोपितास्ति' तिका स्थानमा डा, टिको लोप भयो, 'गोपिता' सिद्ध भयो ।

**गोप्ता**– इट् आगम नभएको पक्षमा 'गुप्+तास्+ति'मा उपधागुण, डा आदेश, टिलोप भयो, 'गोप्ता' सिद्ध भयो । यसैगरी इट् आगम भएको पक्षमा गोपितारौ, गोपितारः आदि र इट्आगम नभएको पक्षमा गोप्तारौ, गोप्तारः आदि रूप सिद्ध हुन्छन् ।

आय प्रत्यय भएको पक्षका र आय प्रत्यय नभएमा इट् आगम भएको पक्षका र इट् आगम नभएको पक्षका छुट्टाछुट्टै रूप क्रमशः तल दिइन्छ ।

**आयप्रत्यय भएको पक्षमा–**

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | गोपायिता | गोपायितारौ | गोपायितारः |
| मध्यमपुरुष | गोपायितासि | गोपायितास्थः | गोपायितास्थ |
| उत्तमपुरुष | गोपायितास्मि | गोपायितास्वः | गोपायितास्मः |

**आय प्रत्यय नभएमा इट् आगम भएको पक्षमा–**

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | गोपिता | गोपितारौ | गोपितारः |
| मध्यमपुरुष | गोपितासि | गोपितास्थः | गोपितास्थ |
| उत्तमपुरुष | गोपितास्मि | गोपितास्वः | गोपितास्मः |

**आय प्रत्यय नभएमा इट् आगम नभएको पक्षमा–**

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | गोप्ता | गोप्तारौ | गोप्तारः |
| मध्यमपुरुष | गोप्तासि | गोप्तास्थः | गोप्तास्थ |
| उत्तमपुरुष | गोप्तास्मि | गोप्तास्वः | गोप्तास्मः |

यस्तै प्रकारले लृट्‌लकारमा स्य प्रत्यय आर्धधातुक हुनाले लृट्‌को विवक्षामा "आयादय आर्धधातुके वा"ले आय प्रत्यय भएको पक्षमा गोपाय धातु बन्दछ । आय प्रत्यय नभएको पक्षमा गुप्‌धातु यथावत् छँदैछ ।

**गोपायिष्यति**– गोपाय धातुदेखि लृट्, लकारका स्थानमा ति, स्य प्रत्यय, स्यको इट्, गोपायका अकारको लोप, षत्व, भयो, 'गोपायिष्यति', सिद्ध भयो । यस्तै प्रकारले 'गोपायिष्यतः'

गोपिष्यति, गोप्स्यति । गोपायतु । अगोपायत् । गोपायेत् । गोपाय्यात्, गुप्यात् । अगोपायीत् ॥

**४७६. नेटि ७।२।४॥**

इडादौ सिचि हलन्तस्य वृद्धिर्न । अगोपीत्, अगौप्सीत् ॥

---

आदि रूप पनि सिद्ध हुन्छन् ।

**गोपिष्यति**– आय प्रत्यय नभएको पक्षमा गुप् धातुदेखि लृट्, स्य प्रत्यय, "स्वरतिसूति०"ले वैकल्पिक इट् आगम उपधागुण, षत्व भयो, 'गोपिष्यति' सिद्ध भयो । यसैगरी 'गोपिष्यतः', 'गोपिष्यन्ति' आदि रूप सिद्ध हुन्छन् ।

**गोप्स्यति**– इट् आगम नभएका पक्षमा 'गुप्+स्यति' यहाँ गुण भयो, 'गोप्स्यति' सिद्ध भयो, । यसैगरी 'गोप्स्यतः', 'गोप्स्यन्तिः' आदि रूप पनि बन्दछन् ।

लोट्, लङ् र विधिलिङ् पनि सार्वधातुक हुनाले आय प्रत्यय नित्य हुन्छ । लोट्मा– गोपायतु/गोपायतात्, गोपायताम्, गोपायन्तु आदि रूप हुन्छन् ।

**लङ्मा**– अगोपायत्, अगोपायताम्, अगोपायन् आदि रूप हुन्छन् ।

**लिङ्मा**– गोपायेत्, गोपायेताम्, गोपायेयुः आदि रूप हुन्छन् ।

**आशीर्लिङ्मा**- "लिङाशिषि"ले तिङ्लाई आर्धधातुक संज्ञा हुन्छ । "आयादय०"ले आर्धधातुक विवक्षा भएकोले आय प्रत्यय विकल्पले हुने हुँदा आय प्रत्यय भएको पक्षमा गोपाय धातु र आय प्रत्यय नभएको पक्षमा गुप् धातु हुनाले दुईथरी रूप हुन्छन् । यासुट् वलादि नहुनाले इट् आगमको प्रसङ्ग यहाँ छैन ।

**गोपाय्यात्**- आशीर्लिङ्को विवक्षामा "आयादय०"ले आय प्रत्यय भएको पक्षमा गोपाय धातुदेखि लिङ्लकार, ति, यासुट् आगम 'गोपाय+यास्ति', "अतो लोपः"ले अकारको लोप, 'गोपाय्+यास्+ति'मा तिका इकारको "इतश्च"ले लोप, 'गोपाय्+यास्+त्', "स्कोः संयोगाद्योः०"ले संयोगादिलोप वर्णमेलन भयो । 'गोपाय्यात्', सिद्ध भयो । यस्तै प्रकारले 'गोपाय्यास्ताम्', 'गोपाय्यासुः', आदि रूप सिद्ध हुन्छन् ।

**गुप्यात्**- आय प्रत्यय नभएको पक्षमा गुप् धातुदेखि आशीर्लिङ्, लकारका स्थानमा तिप्, यासुट्, 'गुप्+यास्+ति' यहाँ यासुट्, ङित् हुनाले गुणनिषेध, तिका इकारको लोप 'गुप्यास्त्' "स्कोः संयोगाद्योः०"ले संयोगादिलोप भयो, 'गुप्यात्' सिद्ध भयो । यस्तै प्रकारले 'गुप्यास्ताम्', 'गुप्यासुः' आदि रूप पनि सिद्ध हुन्छन् ।

**लुङ्लकारमा**- च्लिप्रत्यय आर्धधातुक हुने हुँदा आर्धधातुकको विवक्षामा आय प्रत्यय विकल्पले हुन्छ । आय प्रत्यय भएको पक्षमा–

**अगोपायीत्**– गोपाय धातुदेखि लुङ्, अट् आगम, लकारका स्थानमा ति, शप्लाई बाधेर च्लि, सिच्, सिच्को इट्, अकारको लोप 'आगोपाय्+इस्+ति' यहाँ तिका इकारको लोप, "अस्तिसिचो०"ले त्को ईट् आगम, 'अगोपाय्+इस्+ईत्', "इट ईटि"ले सकारको लोप दीर्घ 'अगोपायीत्' सिद्ध भयो । यस्तै प्रकारले 'अगोपायिष्टाम्', 'अगोपायिषुः' आदि रूप पूर्ववत् सिद्ध हुन्छन् । आय प्रत्यय नभएको पक्षमा सिच्को "स्वरतिसूति०"ले वैकल्पिक इट् आगम हुन्छ । इट् आगम भएको पक्षमा "वदव्रज०"ले पाएको वृद्धि निषेध हुन्छ । निषेध गर्ने सूत्र तल दिइन्छ ।

**नेटि**– इट् आदिमा हुने सिच् पर भएमा हलन्तलक्षण वृद्धि नहोस् ।

**अगोपीत्/अगौप्सीत्**– आय प्रत्यय नभएको पक्षमा गुप् धातुदेखि लुङ् भयो, अट् आगम भयो, 'अगुप्+ल्' लकारका स्थानमा ति, शप्लाई बाधेर च्लि, सिच् आदेश, "आर्धधातुकस्येड्०"लाई

**४७७. झलो झलि ८।२।२६।।**

झलः परस्य सस्य लोपो झलि । अगौप्ताम् । अगौप्सुः । अगौप्सीः । अगौप्तम् । अगौप्त । अगौप्सम् । अगौप्स्व ।

---

बाधेर "स्वरतिसूति०"ले वैकल्पिक इट् आगम, 'अगुप्+इस्+ति', यहाँ 'पुगन्त'लाई बाधेर "वदव्रज०"ले वृद्धि पाएमा, इट् आदिमा हुने सिच् पर हुनाले "नेटि"ले वृद्धिनिषेध भयो, बाधकाभावे लाएर गुण भयो, 'अगोप्+इस्ति', तिका इकारको लोप, ईट् आगम, 'अगोप्+इस्+ईत्' सलोप दीर्घ, 'अगोपीत्' सिद्ध भयो । यस्तै प्रकारले 'अगोपिष्टाम्', 'अगोपिषुः' आदि रूप पनि इट् आगम भएको पक्षमा शुच् धातुमा जस्तै हुन्छन् ।

सिच्को इट् आगम नभएका पक्षमा 'अगुप्+स्+ति' यहाँ "वदव्रजहलन्तस्याचः"ले गुप्का उकारका स्थानमा वृद्धि हुँदा आन्तरतम्यात् औ भयो, 'अगौप्+स्+ति' यहाँ तिका इकारको लोप, 'अगौप्+स्+त्', ईट् आगम 'अगौप्सीत्' यसरी यी दुई रूप सिद्ध भए ।

'अगौप्स् ईत्' यहाँ इट् आगम नभएकोले 'इट ईटि' लागेन र "नेटि"ले वृद्धि निषेध पनि भएन ।

**झल इति**– झल्देखि पररहेका दन्त्य सकारको लोप होस्, झल् पर भएमा ।

**अगोपिष्टाम्/अगौप्ताम्**– आय प्रत्यय नभएको पक्षमा गुप्धातुदेखि लुङ्, अट्आगम, 'अगुप्+ल्', लकारका स्थानमा तस्, 'अगुप्+तस्', तस्का स्थानमा ताम्, च्लि प्रत्यय, च्लिका स्थानमा सिच्, सिच्को "स्वरतिसूति०"ले वैकल्पिक इट्आगम, 'अगुप्+इस्+ताम्', "वदव्रज०"ले पाएको वृद्धिको "नेटि"ले निषेध भयो, लघूपध गुण भयो, षत्व, ष्टुत्व भयो, 'अगोपिष्टाम्' सिद्ध भयो । इट् नभएको पक्षमा 'अगुप्+स्+ताम्' यहाँ "वदव्रज०"ले वृद्धि भयो, 'अगौप्+स्+ताम्' भयो, "झलो झलि"ले अगौप्को पकार (झल्) देखि पर ताम्, तकार हुनाले सकारको लोप भयो, 'अगौप्ताम्' सिद्ध भयो ।

**अगोपिषुः/अगौप्सुः**– गुप् लुङ्, अट्, लकारका स्थानमा झि, च्लि, सिच्, झिका स्थानमा जुस् सिच्को वैकल्पिक इट् आगम भएपछि 'अगुप्+इस्+उस्', "वदव्रज०"ले पाएको वृद्धिको "नेटि"ले निषेध, उपधागुण 'अगोपिसुस्', सुका उकारको षत्व, रुत्व, विसर्ग 'अगोपिषुः' सिद्ध भयो । इट् नभएको पक्षमा 'अगुप्+स्+उस्' यहाँ "वदव्रज०"ले वृद्धि 'अगौप्सुस्' रुत्व, विसर्ग भयो, 'अगौप्सुः' सिद्ध भयो । यसरी दुई रूप भए ।

**अगोपीः/अगौप्सीः**– सिप्मा इट् आगम भएको पक्षमा 'अगुप्+इस्+ईस्' वृद्धिनिषेध, गुण, सलोप, दीर्घ, षत्व, रुत्व, विसर्ग, 'अगोपीः' सिद्ध भयो । इट् नभएको पक्षमा 'अगुप्+स्+इस्' वृद्धि 'अगौप्सीस्', रुत्व, विसर्ग, 'अगौप्सीः' सिद्ध भयो । यसरी दुई रूप भए ।

**अगोपिष्टम्/अगौप्तम्**– थस्मा इट् आगम भएको पक्षमा 'अगुप्+इस्+तम्'मा वृद्धिनिषेध गुण, षत्व, ष्टुत्व, 'अगोपिष्टम्' सिद्ध भयो । इट् नभएको पक्षमा 'अगुप्+स्+तम्' यहाँ वृद्धि सकारको "झलो झलि"ले लोप 'अगौप्तम्' सिद्ध भयो । यसरी दुई रूप भए ।

**अगोपिष्ट/अगौप्त**– थ मा सिच्को इट् आगम भएको पक्षमा 'अगुप्+इस्+त' यहाँ वृद्धिनिषेध, गुण, षत्व, ष्टुत्व, 'अगोपिष्ट' सिद्ध भयो । इट् नभएको पक्षमा वृद्धि 'अगौप्+स्+त' यहाँ "झलो झलि"ले सकारको लोप 'अगौप्त' सिद्ध भयो । यसरी दुई रूप भए ।

**अगोपिषम्/अगौप्सम्**– मिप्मा सिच्को इट् आगम भएको पक्षमा 'अगुप्+इस्+अम्' वृद्धि निषेध गुण, षत्व, 'अगोपिषम्' सिद्ध भयो । इट् नभएको पक्षमा 'अगुप्+स्+अम्' वृद्धि 'अगौप्सम्' सिद्ध भयो ।

**अगोपिष्व/अगौप्स्व**– वस्मा सिच्को इट् आगम भएको पक्षमा 'अगुप्+इस्+वस्' यहाँ नित्यं ङितः"ले सकारको लोप, वृद्धिनिषेध, गुण, 'अगोपिस्व', षत्व, 'अगोपिष्व' सिद्ध भयो । इट्

अगौप्स्म । अगोपायिष्यत्, अगोपिष्यत्, अगोप्स्यत् ॥ **क्षि** क्षये ॥१३॥ क्षयति । चिक्षाय । चिक्षियतुः । चिक्षियुः । एकाच इति निषेधे प्राप्ते–

---

आगम नभएको पक्षमा 'अगुप्+स्+व' यहाँ वृद्धि भयो, 'अगौप्स्व' सिद्ध भयो । यसरी दुई रूप सिद्ध भए ।

**अगोपिष्म/अगौप्स्म**– मस्मा पनि वस्मा जस्तै सिच्को इट् भएको पक्षमा वृद्धिनिषेध, गुण, षत्व, 'अगोपिष्म', सिद्ध भयो । इट् नभएको पक्षमा वृद्धि भयो, 'अगौप्स्म' सिद्ध भयो । यी दुई रूप भए ।

यहाँ "स्वरतिसूतिसूयतिधूञूदितो वा"ले सिच्को इट् विकल्पले हुने हुँदा र, इट् हुँदा एकथरी, इट् नहुँदा अर्कोथरी रूप हुने हुँदा लुङ्का सबै रूप सँगसँगै निष्पन्न गरियो । सिच्को इट् आगम भएको पक्षमा शुच् धातुका जस्तै रूप हुने र इट् आगम नभएको पक्षमा मात्र रूप फरक पर्ने हुनाले मूलमा इट् भएका पक्षको "नेटि"ले वृद्धिनिषेध भएको एकरूप मात्र देखाएर अरू रूप लेखेको छैन । वृद्धि भएका पक्षका रूप मात्र सबै लेखेको छ ।

**अगोपायिष्यत्/अगोपिष्यत्/अगोप्स्यत्**– लृङ् लकारमा आर्धधातुक-स्य प्रत्ययको विवक्षा हुनाले आय प्रत्यय विकल्पले भयो, 'गोपाय'धातु भयो । आय् नभएका पक्षमा 'गुप्'धातु नै छ । लृट्लकारमा गोपायिष्यति, गोपिष्यति, गोप्स्यति भए जस्तै लृङ्मा पनि आयप्रत्यय भएको पक्षमा एकथरि रूप आयप्रत्यय नभएको इट्आगम भएको पक्षमा अर्कोथरि इट्आगम नभएको पक्षमा अर्कोथरि रूप हुन्छन् । लृट् र लृङ्को स्यप्रत्यय र स्यको इट् आगम उस्तै हो फरक के भने यहाँ ति र सिको इकारको "इतश्च"ले लोप तस्, थस्, थ, मिप्का स्थानमा ताम्, तम्, त, अम् आदेश वस्, मस्का सकारको "नित्यं ङितः"ले लोप हुन्छ । आय प्रत्यय भएको पक्षमा अगोपायिष्यत्, अगोपायिष्यताम्, अगोपायिष्यन् आदि रूप हुन्छन् । आय प्रत्यय नभएको पक्षमा वैकल्पिक इट् आगम भएको पक्षमा अगोपिष्यत्, अगोपिष्यताम्, अगोपिष्यन् इत्यादि रूप हुन्छन् । इट् नभएको पक्षमा अगोप्स्यत्, अगोप्स्यताम्, अगोप्स्यन् आदि रूप हुन्छन् । आमन्तदेखि अनुप्रयोग हुने धातुले आम्को प्रकृति धातुसँग मिलेर उसैको अर्थ दिन्छ । यो अनुप्रयोग हुने धातु आमन्त सँग छुट्याएर प्रयोग गर्न हुँदैन । तर महाकविहरूले 'प्रभ्रंशयां यो नहुषं चकार', 'तं पातयां प्रथममास पपात पश्चात्' यसरी छुट्याएर प्रयोग गरेको देखिन्छ । यो प्रयोग पाणिनीयव्याकरणबाट सिद्ध हुन्न । अन्यव्याकरणको आधारमा प्रयोग गरिएको हुनुपर्छ ।

**क्षीति**– क्षि धातु नाश हुनु अर्थमा छ । (अनिट् अकर्मक)

**क्षयति**– क्षि धातुदेखि लट्, तिप्, सार्वधातुक संज्ञा, शप्, 'क्षि+अ+ति', क्षिका इकारका स्थानमा "सार्वधातुकार्धधातुकयोः"ले गुण भयो, 'क्षयति' सिद्ध भयो । यसैगरी 'क्षयतः', 'क्षयन्ति' आदि रूप बन्दछन् । क्षयति, क्षयतः, क्षयन्ति । क्षयसि, क्षयथः, क्षयथ । क्षयामि, क्षयावः, क्षयामः ।

**चिक्षाय**– क्षि धातुदेखि लिट्, तिप्, णल्, 'क्षि+अ' द्वित्व, हलादिशेष, [७८] 'किक्षि+अ' "कुहोश्चुः"ले अभ्यासको चुत्व, 'चिक्षि+अ', "अचोञ्णिति" ले वृद्धि, आयादेश भयो, 'चिक्षाय' सिद्ध भयो ।

**चिक्षियतुः**– क्षि धातुदेखि लिट्, तस्, अतुस् 'क्षि+अतुस्', द्वित्व 'क्षिक्षि+अतुस्' हलादि शेष 'किक्षि+अतुस्', चुत्व 'चिक्षि+अतुस्' कित्त्वाद् गुणनिषेध, "अचिश्नुधातुभ्रुवां०"ले इयङ् 'चिक्षियतुस्' रुत्व, विसर्ग 'चिक्षियतुः' सिद्ध भयो ।

**चिक्षियुः**– क्षि लिट्, झि, उस्, द्वित्व, 'क्षिक्षि+उस्', अभ्यासकार्य, 'चिक्षि+उस्' गुण, निषेध इयङ्, 'चिक्षियुः' सिद्ध भयो ।

**एकाचइति**– थल्मा "एकाच उपदेशे"ले निषेध पाएमा–

---

७८ क्षिमा क् ष् यी दुई हल् छन् पर इ छ हलादिशेष हुँदा षको लोप भयो, ककार बाँकी रह्यो, 'क्+इ', कि भयो ।

**४७८. कृसृभृवृस्तुद्रुस्रुश्रुवो लिटि ७।२।१३॥**

क्रादिभ्य एव लिट इण्न स्यादन्यस्मादनिटोऽपि स्यात् ॥

**४७९. अचस्तास्वत्थल्यनिटो नित्यम् ७।२।६१॥**

उपदेशेऽजन्तो यो धातुस्तासौ नित्यानिट् ततस्थल इण् न ॥

**४८०. उपदेशेऽत्वतः ७।२।६२॥**

उपदेशेऽकारवतस्तासौ नित्यानिटः परस्य थल इण् न स्यात् ॥

---

**कृसृ इति**– कृ, सृ, भृ, वृ, स्तु, द्रु, स्रु, श्रु धातुदेखि पर रहेका लिट्को इट्आगम नहोस्, अरू अनिट धातुदेखि पर रहे पनि लिट्को इट् आगम होस् ।

"कृसृभृवृस्तुद्रुस्रुश्रुवो लिटि" यो सूत्रको सामान्य अर्थ, 'यी धातुदेखि पर रहेको लिट्को इट् आगम नहोस्', हो । यो सूत्रमा उल्लिखित यी सबै धातु उपदेशमा एकाच् र अनुदात्त (अनिट्) छन् । अतः "एकाच उपदेशे०"ले इट् आगम निषेध हुने हुनाले, यो सूत्र आरम्भ गर्नु व्यर्थ भयो र "व्यर्थं सत् किञ्चिज्ज्ञापयति", "सिद्धे सत्यारभ्यमाणो विधिर्नियमाय भवति", (व्यर्थ भएपछि केही जनाउँछ, अथवा सिद्ध छँदा छँदै आरम्भ गरिने विधि नियमका निमित्त हुन्छ) भन्ने परिभाषा अनुसार यो सूत्रले यो नियम गऱ्यो- "लिट्को इट् निषेध हुन्छ भने कृसृभृवृ आदि आठ धातुको मात्र होस्, अरूको नहोस्" तदनुसार वृत्तिकारले सोही वृत्ति लेखेका छन् ।

उपर्युक्त नियमानुसार क्षिधातु अनिट् भए पनि कृसृ आदि आठ धातुभित्र नपर्ने हुँदा लिट्मा क्षि धातुको इट् आगम हुन्छ । यस्तै अरु अनिट् धातुको पनि लिट्मा इट् आगम हुन्छ भन्ने सामान्य नियम भयो, अब थल्मा इट् आगम कुन-कुन धातुको हुने कुन कुन धातुको नहुने भन्ने विशेष नियम "अचस्तास्वत्०", "उपदेशे०", "ऋतो भारद्वाजस्य०" यी तीन सूत्रले बताउँछन् ।

**अच इति**– उपदेशमा अजन्त जो धातु तासि प्रत्ययमा नित्य अनिट् छ, त्यसदेखि पर रहेका थल्को इट् आगम नहोस् ।

"कृसृभृवृ०"ले पाएको इट् आगमको यसले निषेध गर्छ । जस्तै– क्षिधातु उपदेशमा अजन्त र तासि प्रत्ययमा नित्य अनिट् छ । अतः थलमा यस सूत्रले निषेध पाउँछ । उपदेशमा अजन्त भन्नाले 'जह्वर्थ' इत्यादि स्थलमा इट् आगम निषेध होस् भन्ने तात्पर्य हुन्छ । ह्वृ धातु गुण भएर अहिले हलन्त भए पनि उपदेशमा अजन्त थियो । अतः इट् निषेध हुन्छ । तासि प्रत्ययमा नित्य अनिट् भन्नुको तात्पर्य- तासि प्रत्ययमा वैकल्पिक इट् आगम हुने स्वृधातुमा र तासिमा नित्य इट् आगम हुने अजन्त भूआदि धातुको थल्मा यो निषेध नहोस् भन्ने हो ।

**उपदेश इति**– उपदेशमा ह्रस्व अकारवान् तासि प्रत्ययमा नित्यअनिट् धातुदेखि पर रहेका थल्को इट् आगम नहोस् ।

उपदेशमा ह्रस्व अकार भन्नाले 'चकर्षिथ' यहाँ यो निषेध लाग्दैन । गुण भएर कृष् धातु अकारवान् भएको छ तर उपदेशमा ऋकारवान् थियो, अजन्त र अकारवान् थिएन ।

ह्रस्व अकारवान् भन्नाको तात्पर्य- राध् धातु तासिमा नित्यानिट् भए पनि ह्रस्व अकारवान् छैन, दीर्घ अकारवान् छ, त्यहाँ यो निषेध नलागोस् भन्ने हो । तासिमा नित्यानिट् भन्नाले- उपदेशमा ह्रस्व अकारवान् भए पनि ग्रह धातु तासि प्रत्ययमा नित्यानिट् छैन र यो निषेध लाग्दैन । त्यस्तै क्रमु धातु आत्मनेपदमा तासि प्रत्ययमा अनिट् भए पनि परस्मैपदको तासि प्रत्ययमा इट् आगम हुने हुँदा तासि प्रत्ययमा नित्यानिट् भएन र यो नियम लागेन । "उपदेशेऽत्वतः" यो सूत्र क्षि धातुमा लाग्दैन, तर यहाँ थल्को इट्आगम निषेध गर्ने प्रकरणमा उल्लेख गरिएको हो ।

**४८१. ऋतो भारद्वाजस्य ७।२।६३॥**

तासौ नित्यानिट ऋदन्तादेव थलो नेट् भारद्वाजस्य मते। तेन अन्यस्य तु स्यादेव। अयमत्र संग्रहः–

**अजन्तोऽकारवान्वा यस्तास्यनिट् थलि वेडयम्।**
**ऋदन्त इदृङ् नित्यानिट् क्राद्यन्यो लिटि सेड् भवेत्॥**

चिक्षयिथ, चिक्षेथ।

---

**ऋत इति**– तासि प्रत्ययमा नित्यानिट् ह्रस्व ऋकारान्त धातुदेखि पर रहेका थल्को मात्र इट् आगम नहोस्, भारद्वाजको मतमा।

**तेनेति**– त्यसकारण अरू धातुदेखि पररहेका थल्को इट् आगम हुन्छ नै।

**अयमत्रेति**-यहाँ यो सङ्ग्रह छ। अर्थात् "कृ-सृ-भृ-वृ०", "अचस्तास्वत्०", "उपदेशत्वतः०", "ऋतो भारद्वाजस्य" यी चार सूत्रको आशय अथवा चार सूत्रद्वारा प्रतिपादित विषयको सिद्धान्त यो श्लोकमा छ। यो श्लोकको अर्थ बुझेपछि ती सूत्रको बाध्यबाधकताभाव बुझ्नतर्फ प्रयास गरिरहनु पर्दैन। ती चारै सूत्रको अर्थ यही कारिकाबाट बुझिन्छ।

**अजन्त इति**– जो धातु उपदेशमा अजन्त अथवा अकारवान् छ र तासि प्रत्ययमा नित्य अनिट् छ त्यस्तो धातु थल्मा वेट् हुन्छ। ह्रस्व ऋकारान्त तासि प्रत्ययमा नित्यानिट् धातु थल्मा नित्यानिट् (इट् आगम नहुने) हुन्छ। कृसृ आदि आठ धातुदेखि भिन्न धातु लिट्मा सेट् हुन्छ। अर्थात् थल् व्यतिरिक्त लिट्मा इट् आगम हुने अरू ठाउँमा व, म आदिमा क्रादिभिन्न (कृ,सृ,भृ,वृ आदि आठ धातुबाहेक अरू) धातुको इट् आगम हुन्छ। थल्को बारेमा पहिले नै भनियो। 'तास्यनिट्' भनेको हुनाले अनेकाच् धातुमा यो नियम लाग्दैन। त्यस्तै ऊकारान्त धातुहरू लिट्मा, सर्वत्र सेट् हुन्छन्। किनकि "एकाच उपदेशेऽनुदात्तात्" यो सूत्र ती धातुमा लाग्दैन। "एकाचउपदेशे०" नलागेको ठाउँमा "कृसृभृवृ०" यी चार सूत्र लाग्दैनन्।

**सेट्धातु र अनिट्धातु**– व्यवहारमा "एकाच उपदेशेऽनुदात्तात्" लाग्ने धातुलाई अनिट् र अरूलाई सेट् भनिन्छ।

**ऊदृदिति**– एकाच् अजन्त धातुमध्ये दीर्घऊकारान्तधातु, दीर्घऋकारान्तधातु, अदादिको युधातु, रु, क्ष्णु, शीङ्, स्नु, नु, क्षु, श्वि, डीङ्, श्रि, वृङ्, वृञ् यी १२ धातु सेट र अरू अनिट् हुन्।

एकाच् हलन्तधातुमा शक्लृ आदि माथि बताइएका १०३ धातुबाहेक अरू धातु सेट् हुन्, उक्त १०३ धातु अनिट् हुन्। अनेकाच् धातु हलन्त अजन्त सबै सेट् हुन्।

**चिक्षयिथ/चिक्षेय**– क्षि धातुदेखि लिट्, सिप्, थल्, 'क्षि+थ' भएपछि "आर्धधातुकस्येड् वलादेः"ले थल्को इट् आगम पाएकोमा क्षि धातु उपदेशमा एकाच् र अनुदात्त हुनाले "एकाच उपदेशेऽनुदात्तात्" ले इट्को निषेध भयो, "कृ सृ भृ वृ०"ले क्रादि धातुदेखि पर रहेको मात्र लिट्को इट् आगम नहोस्, अरू अनिट् धातुदेखि पनि पर रहेको लिट्को इट् होस् भनेकोले क्षिधातु क्रादि धातुदेखि भिन्न हुनाले इट् आगम पाएमा यो क्षि धातु उपदेशमा अजन्त र तासिमा नित्य अनिट् हुनाले "अचस्तास्वत्०"ले इट् आगमको निषेध भयो, अनि "ऋतो भारद्वाजस्य"ले भारद्वाजका मतमा ऋदन्त धातुको मात्र थलमा इट् आगम नहोस् भनेकोले यो ऋदन्त छैन र इट् आगमको निषेध भएन, इट् आगम भयो, 'क्षि+इथ' द्वित्व अभ्यासकार्य भयो, "सार्वधातुकार्ध०"ले गुण अय् आदेश भयो, 'चिक्षयिथ' सिद्ध भयो, पाणिनिका मतमा त "अचस्तास्वत्०"ले इट् आगमको निषेध भएको नै छ, 'क्षि+थ' यहाँ द्वित्व, अभ्यासकार्य, गुण भयो, 'चिक्षेथ' सिद्ध भयो।

चिक्षियथुः । चिक्षिय । चिक्षाय, चिक्षय । चिक्षियिव । चिक्षियिम । क्षेता । क्षेष्यति । क्षयतु । अक्षयत् । क्षयेत् ॥

**४८२. अकृत्सार्वधातुकयोर्दीर्घः ७।४।२५॥**

अजन्ताङ्गस्य दीर्घो यादौ प्रत्यये न तु कृत्सार्वधातुकयोः । क्षीयात् ।

---

**चिक्षियथुः**– क्षि धातुदेखि लिट्, थस्, थस्का स्थानमा अथुस् 'क्षि+अथुस्' द्वित्व, अभ्यासकार्य, 'चिक्षि+अथुस्,' अथुस्को कित्त्व हुनाले "सार्वधातुका०"ले पाएको गुण निषेध भयो, "अचिश्नुधातुभ्रुवां०"ले इयङ् भयो 'चिक्षियथुः' सिद्ध भयो ।

**चिक्षिय**– यस्तै प्रकारले मध्यमपुरूषको बहुवचनमा 'चिक्षि+अ'यहाँ गुणनिषेध, इयङ् भयो, 'चिक्षिय' सिद्ध भयो ।

**चिक्षाय/चिक्षय**– उत्तमपुरुषको एकवचन णल्मा पूर्ववत् 'चिक्षि+अ' भएपछि "णलुत्तमो वा"ले णित्त्व वैकल्पिक भएकोले णित्त्व भएको पक्षमा "अचोञ्णिति"ले वृद्धि भयो, आय् आदेश भयो, 'चिक्षाय' सिद्ध भयो । णित्त्व नभएका पक्षमा "सार्वधातुकार्धधातुकयोः०"ले गुण भयो, अय् आदेश भयो, 'चिक्षय' सिद्ध भयो ।

**चिक्षियिव**– क्षि, लिट्, उत्तमपुरूषको द्विवचन वस्, व, 'क्षि+व' यहाँ "आर्धधातुकस्येड् वलादेः"ले पाएको इट् "एकाच उपदेशे०"ले निषेध भयो "कृसृभृस्तुद्रु०" यो नियमले इट् आगम भयो, 'क्षि+इव' भयो, द्वित्व, अभ्यासकार्य भयो, 'चिक्षि+इव' इव यो कित् हुनाले गुण निषेध भएपछि इयङ् भयो, 'चिक्षियिव' सिद्ध भयो ।

**चिक्षियिम**– लिट् उत्तमपुरुषको बहुवचनमा 'क्षि+म' भएपछि द्विवचनमा जस्तै प्रक्रिया भएर 'चिक्षियिम' सिद्ध भयो ।

**क्षेता**– क्षि धातुदेखि लुट्, ति, 'क्षि+ति', तासि प्रत्यय 'क्षि+तास्+ति' यहाँ "आर्धधातुकस्येड्"ले तासिको इट् आगम पाएकोमा "एकाच उपदेशे०"ले निषेध भयो, क्षिका इकारका स्थानमा "सार्वधातुकार्ध०"ले गुण भयो, 'क्षेतास्ति' भयो, ति का स्थानमा "लुटः प्रथमस्य०"ले डा आदेश डित्त्वसामर्थ्यात् टिलोप भयो, 'क्षेता' सिद्ध भयो ।

यस्तै प्रकारले क्षेतारौः, क्षेतारः आदि रूप सिद्ध हुन्छन् ।

**क्षेष्यति**– क्षि लिट्, ति, स्य प्रत्यय, स्यको इट् आगमको निषेध, गुण, षत्व, भयो, 'क्षेष्यति' सिद्ध भयो । यस्तै प्रकारले क्षेष्यतः, क्षेष्यन्ति आदि रूप पनि सिद्ध हुन्छन् ।

**क्षयतु/तात्**– क्षि धातुदेखि विध्यादिलोट्, 'क्षि+ल्' तिप्, शबादिकार्य भएर क्षयति भएपछि "एरुः"ले उत्व भयो, 'क्षयतु' सिद्ध भयो । आशीर्वाद अर्थको लोट्मा पूर्ववत् 'क्षयतु' भएपछि वैकल्पिक तातङ् भयो, 'क्षयतात्' सिद्ध भयो । तातङ् नभएको पक्षमा 'क्षयतु' हुन्छ । विध्यादिलोट् र आशीर्लोट्को संयुक्तरूप 'क्षयतु/क्षयतात्' यी दुई रूप हुन्छन् । अरू रूपहरू पनि पूर्ववत् सिद्ध हुन्छन् ।

**लङ्मा**- ताम् आदि आदेश "इतश्च"ले इकार लोपः अट्आगम, "नित्यं ङितः" ले सकार लोप यी कार्य लट्मा भन्दा विशेष हुन्छन्, अरू प्रक्रिया उस्तै हुन्छ र अक्षयत्, अक्षयताम्, अक्षयन् आदि रूप हुन्छन् ।

**विधिलिङ्मा**- यासुट्, आगम इय् आदेश, इकारको लोप, सकारको लोप, लट्मा भन्दा यी विशेष कार्य हुन्छन् र क्षयेत्, क्षयेताम्, क्षयेयुः आदि रूप हुन्छन् ।

**अकृदिति**– अजन्त अङ्गका अच्का स्थानमा दीर्घ होस् यकार आदिमा हुने प्रत्यय पर भएमा, कृत्सञ्ज्ञक र सार्वधातुकसञ्ज्ञक प्रत्यय पर भएमा त नहोस् ।

**क्षीयात्**– क्षि धातुदेखि लिङ, तिप्, यासुट् आगम, तिका इकारको लोप भएपछि 'क्षि+यास्त्'

---

**४८३. सिचि वृद्धिः परस्मैपदेषु ७।२।१॥**

इगन्ताङ्गस्य वृद्धिः स्यात् परस्मैपदे सिचि । अक्षैषीत् । अक्षेष्यत् । **तप** संतापे ॥१४॥ तपति । तताप । तेपतुः । तेपुः । तेपिथ, ततप्थ ।

---

यहाँ यासुट् ङित् हुनाले गुणनिषेध भयो, "अकृत्सार्वधातुकयोः" यो सूत्रले कृत् प्रत्यय सार्वधातुक प्रत्यय भिन्न यकारादि प्रत्यय पर हुनाले क्षिका इकारका स्थानमा दीर्घ भयो, "स्कोः संयोगाद्योः०"ले सकारको लोप भयो, 'क्षीयात्' सिद्ध भयो । यस्तै प्रकारले क्षीयास्ताम् आदि रूप हुन्छन् । यहाँ आशीर्वाद अर्थमा विधान गरिएको लिङ्सम्बन्धी तिङ् र त्यसको आगम यासुट् आर्धधातुक छ ।

**सिचीति**– इक् अन्तमा हुने अङ्गका स्थानमा वृद्धि होस्, परस्मैपद पर भएको सिच् पर भएमा ।

**अक्षैषीत्**– क्षि धातुदेखि लुङ्, अट् आगम, लकारका स्थानमा ति, च्लि प्रत्यय च्लिका स्थानमा सिच्, इट् आगमको "एकाच उपदेशे०"ले निषेध भयो, 'अक्षि+स्+ति' यहाँ तिका इकारको लोप, इट् आगम 'अक्षि+सईत्' अक्षिका इकारका स्थानमा "सार्वधातुका०"ले पाएको गुणलाई बाधेर "सिचि वृद्धिः परस्मैपदेषु"ले वृद्धि हुँदा ऐकार 'अक्षैसीत्', षत्व, 'अक्षैषीत्' सिद्ध भयो ।

यहाँ सिच्को इट्निषेध र वृद्धि विशेषकार्य छन् । अरू कार्य पूर्ववत् हुन्छन् र अरू रूप पनि सिद्ध हुन्छन् ।

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अक्षैषीत् | अक्षैष्टाम् | अक्षैषुः |
| मध्यमपुरुष | अक्षैषीः | अक्षैष्टम् | अक्षैष्ट |
| उत्तमपुरुष | अक्षैषम् | अक्षैस्व | अक्षैष्म |

**अक्षेष्यत्**– क्षि लृङ्, अट् आगम तिप्, स्य प्रत्यय, स्यको इट्निषेध, गुण, इकारको लोप भयो, 'अक्षेष्यत्' सिद्ध भयो । यहाँ स्य प्रत्ययको इट्निषेध विशेषकार्य छ अरू कार्य पूर्ववत् हुन्छ र अरू रूप पनि सिद्ध हुन्छन् ।

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अक्षेष्यत् | अक्षेष्यताम् | अक्षेष्यन् |
| मध्यमपुरुष | अक्षेष्यः | अक्षेष्यतम् | अक्षेष्यत |
| उत्तमपुरुष | अक्षेष्यम् | अक्षेष्याव | अक्षेष्याम |

**तप इति**–तप धातु सन्ताप गर्नु अर्थमा छ । पका अकारको इत्संज्ञा र लोप हुन्छ । (अनिट् अकर्मक)

**तपति**– तप् लट्, तिप्, शप्, 'तपति' सिद्ध भयो । यस्तै प्रकारले तपतः, तपन्ति आदि रूप लट्मा सिद्ध हुन्छन् ।

**तताप**– तप् लिट्, तिप्, णल्, 'तप्+अ' द्वित्व, 'तप्+तप्+अ', द्वित्व अभ्यासकार्य 'ततप्+अ', "अत उपधायाः"ले वृद्धि भयो, 'तताप' सिद्ध भयो ।

**तेपतुः**– तप् लिट्, तस्, अतुस्, 'तप्+अतुस्' यहाँ द्वित्व, हलादिशेष, 'ततप्+अतुस्' कित् लिट् पर हुनाले "अत एकहल्मध्ये०"ले एत्व र अभ्यासको लोप 'तेपतुः' सिद्ध भयो । यस्तै बहुवचनमा 'तेपुः' सिद्ध हुन्छ ।

**तेपिथ/ततप्थ**– तप् लिट्, सिप्, थल्, 'तप्+थ' भएपछि "आर्धधातुकस्येड्०"ले पाएको इट् "एकाच उपदेशे०"ले निषेध भयो "कृसृभृवृ०" लाएर इट् आगम पाएमा "उपदेशेऽत्वतः"ले निषेध भयो अनि "ऋतो भारद्वाजस्य" लाएर भारद्वाजका मतमा इट् भयो, द्वित्व, हलादिशेष भयो, 'ततप्+इथ' "थलि च सेटि"ले एत्व र अभ्यास लोप भयो, 'तेपिथ' सिद्ध भयो । पाणिनिका मतमा "उपदेशे०"ले निषेध भएकै छ, इट् भएन द्वित्व र हलादिशेष भयो, 'ततप्थ' सिद्ध भयो, यसरी दुई रूप भए ।

तेपिव । तेपिम । तप्ता । तप्स्यति । तपतु । अतपत् । तपेत् । तप्यात् । अताप्सीत् । अताप्ताम् । अतप्स्यत् ॥ **क्रमु** पादविक्षेपे ॥१५॥

**४८४. वा भ्राशभ्लाशभ्रमुक्रमुक्लमुत्रसित्रुटिलषः** ३।१।७०॥

एभ्यः श्यन्वा कर्त्रर्थे सार्वधातुके परे । पक्षे शप् ॥

**४८५. क्रमः परस्मैपदेषु** ७।३।३६॥

क्रमो दीर्घः परस्मैपदे शिति ।

---

**तेपथुः,तेप**– तप् लिट्, थस्, अथुस्, द्वित्व, हलादिशेष, कित् लिट् पर हुनाले "अत एकहल्मध्ये०"ले एत्व र अभ्यासलोप 'तेपथुः' सिद्ध भयो । यस्तै बहुवचन थकारका स्थानमा अआदेश भएपछि 'तप्+अ' द्वित्व, हलादिशेष, एत्व, अभ्यासलोप भयो, 'तेप' सिद्ध भयो ।

**ततापं/ततप**– उत्तमपुरुषको णल् मिप्का स्थानमा भएको णल् स्थानिवद्भावले पित् छ कित् छैन र एत्व अभ्यासलोप भएन । 'ततप्+अ' यहाँ "णलुत्तमो वा"ले णित् भएको पक्षमा उपधावृद्धि भयो 'तताप' वृद्धि नभएको पक्षमा 'ततप' यी दुई रूप सिद्ध भए ।

**तेपिव,तेपिम**– व,म,मा "आर्धधातुकस्येड्०"ले पाएको इट् "एकाच उपदेशे०"ले निषेध भएपछि क्रादिनियमले नित्य इट् आगम हुन्छ । द्वित्व अभ्यास कार्य भएपछि कित् लिट् पर हुनाले एत्व र अभ्यास लोप हुन्छ र 'तेपिव', 'तेपिम' हुन्छ ।

**तप्ता**– लुट्मा "आर्धधातुकस्येड्०"ले पाएको इट् आगम "एकाच उपदेशे०"ले निषेध हुन्छ अरू सबै कार्य पूर्ववत् हुन्छन् र तप्ता, तप्तारौ आदि रूप बन्छन् ।

**तप्स्यति**– लृट्मा पनि स्य प्रत्ययको इट् आगमको पूर्ववत् निषेध हुन्छ । अरू सबै कार्य पूर्ववत् हुन्छन् र तप्स्यति, तप्स्यतः, तप्स्यन्ति, आदि रूप हुन्छन् ।

**लोट्मा**– तपतु/तपतात्, तपताम् आदि रूप हुन्छन् । लङ्मा- अतपत्, अतपताम्, आदि, विधिलिङ्मा- तपेत्, तपेताम् आदि, आशीर्लिङ्मा– तप्यात्, तप्यास्ताम् आदि रूप पूर्ववत् हुन्छन् ।

**अताप्सीत्**– तप् लुङ्, अट् आगम, ति, च्लि, सिच्, 'अतप्+स्+ति' सिच्को इट्निषेध तिका इकारको लोप ईट् आगम 'अतप्+स्+ईत्' यहाँ "वदव्रजहलन्तस्याचः"ले तप्का अकारका स्थानमा वृद्धि भएर आकार भयो, 'अताप्सीत्' सिद्ध भयो । यस्तै प्रकारले तस् आदिमा पनि वृद्धि भएपछि "झलो झलि"ले सकारको लोप भयो 'अताप्ताम्' सिद्ध भयो । झिमा "सिजभ्यस्त०"ले जुस् हुन्छ, झल् पर नहुनाले "झलो झलि" लाग्दैन, 'अताप्सुः' हुन्छ । बाँकी- अताप्सीः, अताप्तम्, अताप्त । अताप्सम्, अताप्स्व, अताप्स्म । यी रूप पनि गुप् धातुमा इट् नभएको पक्षमा जस्तै प्रक्रिया भएर सिद्ध हुन्छन् ।

**अतप्स्यत्**– तप लृङ्, अट् आगम, तिप्, स्य, इट्निषेध, इकारलोप भयो, 'अतप्स्यत्', सिद्ध भयो । यस्तैप्रकारले अतप्स्यताम्, अतप्स्यन्, आदि रूप पूर्ववत् सिद्ध हुन्छन् ।

**क्रमु**- धातु पाउ चाल्नु (हिँड्नु) अर्थमा छ । उकारको इत्संज्ञा र लोप हुन्छ । (सेट् सकर्मक)

**वा भ्राशेति**– भ्राश्, भ्लाश्, भ्रम्, क्रम्, त्रस्, त्रुट्, लष्, यी धातुदेखि श्यन् प्रत्यय विकल्पले होस् कर्ता अर्थमा विधान गरिएको सार्वधातुकसंज्ञक प्रत्यय पर भएमा ।

श्यन्का शकारको "लशक्वतद्धिते"ले नकारको "हलन्त्यम्"ले इत्संज्ञा र "तस्य लोपः"ले लोप हुन्छ । बाँकी रहेको यलाई शित्त्वात् सार्वधातुकसंज्ञा हुन्छ ।

**पक्ष इति**– एक पक्षमा "कर्तरि शप्"ले शप् प्रत्यय हुन्छ । एक पक्षमा "वाभ्राशभ्लाश०"ले वैकल्पिक श्यन् प्रत्यय हुने र नभएको पक्षमा शप् हुने हुँदा सार्वधातुक लकारमा दुई थरी रूप हुन्छन् ।

**क्रम इति**– क्रम् धातुका स्थानमा दीर्घ होस् परस्मैपद पर हुने शित् प्रत्यय पर भएमा ।

---

क्राम्यति, क्रामति । चक्राम । क्रमिता । क्रमिष्यति । क्राम्यतु, क्रामतु । अक्राम्यत्, अक्रामत् । क्राम्येत्, क्रामेत् । क्राम्यात् । अक्रमीत् । अक्रमिष्यत् ॥ **पा** पाने ॥१६॥

---

**क्राम्यति/क्रामति**– क्रम् धातुदेखि लट् लकार भयो, लट्का स्थानमा तिप् 'क्रम्+ति' भयो, यहाँ "कर्तरि शप्"ले शप् प्रत्यय पायो त्यसलाई बाधेर "वा भ्राशभ्लाश०"ले वैकल्पिक श्यन् प्रत्यय भयो, 'क्रम्+य+ति' भएपछि "क्रमः परस्मैपदेषु"ले क्रम्का अकारका स्थानमा दीर्घ आकार भयो, 'क्राम्यति' सिद्ध भयो । श्यन् नभएका पक्षमा शप् भयो, 'क्रम्+अति' यहाँ अतिको अ शित् हुनाले "क्रमः परस्मैदेषु"ले दीर्घ भयो, 'क्रामति' सिद्ध भयो यसरी-दुई रूप भए । यसैगरी क्राम्यतः, क्रामतः, क्राम्यन्ति, क्रामन्ति आदि रूप हुन्छन् ।

परस्मैपद पर भएको शित् पर भएमा मात्र भनेकोले आत्मनेपद हुने स्थलमा यसले दीर्घ हुन्न जस्तै–

प्रक्रमते उपक्रमते (आरम्भ गर्छ) साधु विक्रमते वाजी (घोडा राम्रोसँग हिँड्छ)

यहाँ "प्रोपाभ्यां समर्थाभ्याम्" र "वेः पादविहरणे"ले आत्मनेपद हुन्छ । अनुपसृष्ट क्रम धातुदेखि पनि वैकल्पिक आत्मनेपद "अनुपसर्गाद्वा"ले हुन्छ । यस्तै अरू अर्थमा पनि क्रम् धातुदेखि आत्मनेपद भएमा दीर्घ हुँदैन ।

**चक्राम**– क्रम् लिट्, तिप्, णल्, 'क्रम्+अ', द्वित्व, 'क्रम्क्रम्+अ', हलादिशेष, 'कक्रम्+अ', अभ्यासकार्य, 'चक्रम्+अ', वृद्धि, 'चक्राम' सिद्ध भयो । अतुस्मा द्विहल् माझमा भएको अकार छ आदिमा वैरूप्यसम्पादक आदेश भएको पनि छ र "अत एकहल्मध्ये०"ले एत्व अभ्यास लोप भएन, 'चक्रमतुः' भयो, यस्तै प्रकारले अरू रूप पनि सिद्ध गर्नू । थल्मा, तासिमा नित्य अनिट् नहुनाले "उपदेशेत्वतः" लाग्दैन नित्य इट् हुन्छ । सबै रूप तल दिइन्छ-

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | चक्राम | चक्रमतुः | चक्रमुः |
| मध्यमपुरुष | चक्रमिथ | चक्रमथुः | चक्रम । |
| उत्तमपुरुष | चक्राम/चक्रम | चक्रमिव | चक्रमिम । |

अरू लकारमा विशेष प्रक्रिया छैन क्रमिता, क्रमिष्यति, आदि रूप पूर्ववत् सिद्ध गर्नू ।

**अक्रमीत्**– क्रम् लुङ्, अट्, 'अक्रम्+ल्', ति, च्लि, सिच्, इट्, तिका इकारको लोप भयो, 'अक्रम्+इस्+ईत्' यहाँ "वदव्रज०"ले पाएको वृद्धि "नेटि"ले निषेध भयो, अनि "अत उपधायाः"ले वृद्धि पाएको यो मकारान्त धातु हुनाले "ह्म्यन्तक्षण०"ले निषेध भयो 'अक्रमीत्' सिद्ध भयो । यस्तै प्रकारले अक्रमिष्टाम् आदि रूप हुन्छन् ।

**अक्रमिष्यत्**– लृङ्लकारमा अक्रमिष्यत् आदि रूप हुन्छन् ।

**उपसर्गको योगमा**–

आक्रामति (आक्रमण गर्दछ) । सङ्क्रामति (एक ठाउँबाट अर्को ठाउँमा जान्छ) ।
पराक्रामति (पराक्रम गर्छ) । निष्क्रामति (निस्कन्छ) ।
परिक्रामति (प्रदक्षिणा गर्छ) । उत्क्रामति (उँभो लाग्छ) ।

**पा**– धातु पिउनु अर्थमा छ । (अनिट् सकर्मक)

---

**४८६. पाघ्राध्मास्थाम्नादाणदृश्यर्तिसर्तिशदसदां पिबजिघ्रधमतिष्ठ-मनयच्छ-पश्यच्छर्धौशीयसीदाः ७।३।७८॥**

पादीनां पिबादयः स्युरित्संज्ञकशकारादौ प्रत्यये परे। पिबादेशोऽदन्तस्तेन न गुणः। पिबति।

**४८७. आत औ णलः ७।१।३४॥**

आदन्ताद्धातोर्णल औकारादेशः स्यात्। पपौ॥

**४८८. आतो लोप इटि च ६।४।६४॥**

अजाद्योरार्धधातुकयोः क्ङिदिटोः परयोरातो लोपः। पपतुः। पपुः। पपिथ, पपाथ।

---

**पाघ्रेति**– पा,घ्रा,ध्मा,स्था,म्ना,दाण,दृश,ऋ,सृ,शद,सद, यी धातुका स्थानमा क्रमैले पिब, जिघ्र,धम,तिष्ठ,मन,यच्छ,पश्य,ऋच्छ,धौ,शीय,सीद, आदेश होऊन्, इत्संज्ञक तालव्य शकार आदिमा हुने प्रत्यय पर भएमा।

यहाँ पाधातु पिउनु अर्थको पा पाने लिइन्छ। ऋ धातु र सृ धातु पनि भौवादिक लिइन्छ। ऋ धातुमा 'ऋच्छति' आदि रूप हुन्छन्। सृ धातुको शीघ्रगति अर्थमा मात्र धौ आदेश हुन्छ र 'धावतिः' आदि रूप हुन्छन्।

**पिबेति**– पिबआदेश ह्रस्व अकारान्त छ, अत एव गुण हुँदैन। हलन्त पिब् यस्तो आदेश भएको भए 'पिब्+अति' मा "पुगन्त०"ले गुण पाउँथ्यो भन्ने आशय हो।

**पिबति**– पा धातुदेखि लट् लकार, लकारका स्थानमा तिप्, शप्प्रत्यय, 'पा+अ+ति' यहाँ पाका स्थानमा "पाघ्राध्मा०"ले पिब आदेश भयो, 'पिब+अ+ति', "अतो गुणे" ले पररूप भयो 'पिबति' सिद्ध भयो। यस्तै प्रकारले पिबतः, पिबन्ति आदि रूप पनि हुन्छन्। झिमा 'पिब+अ+अन्ति' पररूप, 'पिब+अन्ति' पुनः पररूप, 'पिबन्ति' हुन्छ।

**पा धातु लट्का सबै रूप–**

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | पिबति | पिबतः | पिबन्ति |
| मध्यमपुरुष | पिबसि | पिबथः | पिबथ |
| उत्तमपुरुष | पिबामि | पिबावः | पिबामः |

**आत इति**– आकारान्त धातुदेखि पर रहेका णल्का स्थानमा औकार आदेश होस्।

**पपौ**– पाधातुदेखि लिट्, तिप्, णल्, 'पा+अ' यहाँ "आत औ णलः"ले औकार आदेश 'पा+औ' द्वित्व, अभ्यासकार्य, वृद्धि, 'पपौ' सिद्ध भयो।

**आतो लोपइति**– अच् आदिमा हुने आर्धधातुकसंज्ञक कित्ङित् प्रत्यय र इट् आगम पर भएमा आकारको लोप होस्। वृत्तिमा आर्धधातुकयोः, द्विवचन छ, अतः कित्, ङित् प्रत्यय र इट् आगम दुवैमा आर्धधातुक शब्दको अन्वय हुन्छ। आर्धधातुकसंज्ञक प्रत्ययको इट् पनि "यदामस्तद्गुणीभूतः०" यो परिभाषाले आर्धधातुक नै हुन्छ।

**पपतुः**– पा धातुदेखि लिट् लकारको द्विवचनमा पूर्ववत् कार्य भएर 'पपा+अतुस्' भएपछि "आतो लोप इटि च"ले अतुस् यो आर्धधातुकसंज्ञक कित् प्रत्यय पर भएको हुनाले पपाको आकारको लोप भयो, 'पपतुः' सिद्ध भयो

**पपुः**–यस्तै रीतले बहुवचनमा 'पपा+उस्' भएपछि आकारको लोप भयो, 'पपुः' सिद्ध भयो।

**पपिथ/पपाथ**– सिप्मा 'पा+थ' भएपछि "आर्धधातुकस्येड्०"ले पाएका थल्को इट्आगम "एकाच०"ले निषेध भएपछि, "कृसृभृ०" यो नियम लगाएर इट् आगम पाएको "अचस्तास्वत्०"ले निषेध भयो, "ऋतोभारद्वाजस्य"ले भारद्वाजका मतमा इट् आगम भयो, द्वित्व, अभ्यासकार्य,

पपथुः । पप । पपौ । पपिव । पपिम । पाता । पास्यति । पिबतु । अपिबत् । पिबेत् ॥

**४८९. एर्लिङि ६।४।६७॥**

घुसंज्ञकानां मास्थादीनां च एत्वं स्यादार्धधातुके किति लिङि । पेयात् । गातिस्थेति सिचो लुक् । अपात् । अपाताम् ॥

**४९०. आतः ३।४।११०॥**

सिज्लुकि आदन्तादेव झेर्जुस् ॥

**४९१. उस्यपदान्तात् ६।१।९६॥**

अपदान्तादकारादुसि पररूपमेकादेशः ।

---

'पपा+इथ' भएपछि, आकारको "आतो लोपः"ले लोप भयो, 'पपिथ' इट् आगम नभएमा पनि द्वित्व, अभ्यासकार्य भयो, 'पपाथ' यी दुई रूप सिद्ध भए ।

**पपथुः, पप**– अथुस् र अमा कित् लिट् पर हुनाले आकार लोप भयो, 'पपथुः', 'पप' यी रूप सिद्ध भए ।

**पपौ**– उत्तमपुरुषको णल्मा, 'पपा+औ' भएपछि, वृद्धि भयो, 'पपौ' सिद्ध भयो ।

**पपिव, पपिम**– व, म, मा "आर्धधातुकस्येड्०"ले पाएको इट् आगम "एकाच०"ले निषेध भएपछि, "कृसभृवृ०"ले नित्य इट् भयो, "आतो लोपः"ले आकार लोप भयो, 'पपिव', 'पपिम' यी रूप सिद्ध भए ।

**लुट्मा**– पाता आदि, **लृट्मा** पास्यति आदि, **लोट्मा** पिबतु/तात् आदि, **लङ्मा** अपिबत् आदि, **विधिलिङ्मा** पिबेत् आदि रूप हुन्छन् । सार्वधातुक लकारमा पिब आदेश विशेष कार्य छ । लुट् र लृट्मा इट् आगम निषेध हुन्छ । अरू केही विशेषकार्य छैन । पूर्ववत् प्रक्रिया हुन्छ र रूप सिद्ध हुन्छन् ।

**एरिति**– घुसंज्ञकधातु, मा धातु, स्था धातु, गै धातु, पिबति रूप हुने पाधातु, जहाति रूप हुने हा धातु, स्यति रूप हुने सा धातुका आकारका स्थानमा एकार आदेश होस् । आर्धधातुकसंज्ञक कित् लिङ् पर भएमा ।

**पेयात्**– पा आशीर्लिङ्, तिप्, यासुट्, 'पायास्+ति', इकार लोप 'पायास्+त्' संयोगादि लोप 'पायात्' भएपछि, "एर्लिङि"ले कित् लिङ्, यात् पर हुनाले र यो पिबति रूप हुने पा धातु हुनाले पाका आकारका स्थानमा एकार भयो, 'पेयात्' सिद्ध भयो, यस्तै 'पेयास्ताम्', 'पेयासुः' आदि रूप बन्दछन् । सबै रूप- पेयात्, पेयास्ताम्, पेयासुः । पेयाः, पेयास्तम्, पेयास्त । पेयासम्, पेयास्व, पेयास्म ।

**गातीति**– लुङ्मा "गातिस्थाघुपाभूभ्यः०" यो सूत्रले सिच्को लुक् हुन्छ ।

**अपात्, अपाताम्**– पा धातुदेखि लुङ्, अट्, तिप्, च्लि, सिच्, इट्निषेध भएपछि सिच्को "गातिस्थाघुपाभूभ्यः"ले लुक् भयो, 'अपाति' यहाँ तिका इकारको इतश्चले लोप भयो, 'अपात्' सिद्ध भयो । द्विवचनमा तस्का स्थानमा ताम् आदेश भयो, 'अपाताम्' सिद्ध भयो ।

**आतइति**– सिच्को लुक् भएमा आकारान्त धातुदेखि मात्र पररहेका झिका स्थानमा जुस् होस् । यो नियम सूत्र हो । यहाँ "सिजभ्यस्त०"ले झिका स्थानमा जुस् पाएकै थियो, यो सूत्रले 'सिच्को लुक् भएपछि स्थानिवद्भाव भएर जुस् हुन्छ भने आकारान्त धातुदेखि पर रहेका झिका स्थानमा मात्र होस्', यो नियम गर्छ र 'अभूवन्' मा जुस् हुँदैन ।

**उसीति**– अपदान्त अवर्णदेखि उस् पर भएमा पररूप एकादेश होस् ।

अपुः । अपास्यत् ॥ ग्लै हर्षक्षये ॥१७॥ ग्लायति ॥

**४९२. आदेच उपदेशेऽशिति ६।१।४५॥**

उपदेशे एजन्तस्य धातोरात्वं न तु शिति । जग्लौ । ग्लाता । ग्लास्यति । ग्लायतु । अग्लायत् । ग्लायेत् ॥

**४९३. वाऽन्यस्य संयोगादेः ६।४।६८॥**

घुमास्थादेरन्यस्य संयोगादेर्धातोरात एत्वं वार्धधातुके किति लिडि । ग्लेयात्, ग्लायात् ॥

---

**अपुः–** पा धातुदेखि लुङ्, अट् आगम लकारका स्थानमा प्रथमपुरुष बहुवचन झि, च्लि, सिच्, इट्निषेध सिच्को लुक् भएपछि, "आतः"ले झिका स्थानमा जुस् जकारको "चुटू"ले इत्संज्ञा र लोप, 'अपा+उस्' भएपछि– यहाँ अपाको आकार अपदान्त अवर्ण छ उस् पर भएमा "उस्यपदान्तात्"ले पररूप उकार एकादेश भयो, 'अपुस्' रुत्व, विसर्ग 'अपुः' सिद्ध भयो ।

**अपास्यत्–** लृङ्मा 'अपास्यति' भएपछि, स्य प्रत्ययको इट् निषेध तिका इकारको लोप 'अपास्यत्' सिद्ध भयो । यस्तै 'अपास्यताम्' आदि रूप पनि सिद्ध हुन्छन् ।

**ग्लै इति–** ग्लै धातु हर्षनाश हुनु अर्थात् ग्लानि हुनु अर्थमा छ । (अनिट् अकर्मक)

**ग्लायति–** ग्लै धातुदेखि लट्, तिप्, शप् भएपछि, आय् आदेश भयो, 'ग्लायति' सिद्ध भयो । यस्तै प्रकारले लट्मा अन्यत्र पनि आय् आदेश हुन्छ र 'ग्लायतः', 'ग्लायन्ति' आदि अरू रूप पनि सिद्ध हुन्छन् ।

**आदेच इति–** उपदेशमा एच् अन्तमा हुने धातुका स्थानमा आत्व होस्, शित् प्रत्ययको विवक्षा छैन भने- "अलोऽन्त्यस्य" लगाएर आकार अन्त्य अल्का स्थानमा हुन्छ ।

**जग्लौ–** ग्लै धातुका ऐकारका स्थानमा लिट्मा शित् प्रत्ययको विवक्षा नहुनाले आकार भयो, ग्ला धातुदेखि लिट्, तिप्, णल् 'ग्ला+अ' द्वित्व, हलादिशेष, 'गग्ला+अ' चुत्व, 'जग्ला+अ' "आत औ णलः"ले औकार आदेश, वृद्धि 'जग्लौ' सिद्ध भयो । यस्तै प्रकारले जग्लतुः, जग्लुः आदि रूप बन्दछन् । थल्मा तासि प्रत्ययमा नित्यानिट् अजन्तधातु हुनाले वैकल्पिक इट् आगम हुन्छ । व,ममा "कृसृभृवृ०" लाएर नित्य इट्आगम हुन्छ ।

**लिट्का सबै रूप–**

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | जग्लौ | जग्लतुः | जग्लुः |
| मध्यमपुरुष | जग्लिथ/जग्लाथ | जग्लथुः | जग्ल |
| उत्तमपुरुष | जग्लौ | जग्लिव | जग्लिम |

लुट्मा, ग्लाता, ग्लातारौ, ग्लातारः, आदि रूप हुन्छन् ।

लृट्मा, ग्लास्यति, ग्लास्यतः, ग्लास्यन्ति, आदिरूप हुन्छन् ।

लोट्मा, ग्लायतु/तात्, ग्लायताम्, ग्लायन्तु आदि रूप हुन्छन् ।

लङ्मा, अग्लायत्, अग्लायताम्, अग्लायन् आदि रूप हुन्छन् ।

विधिलिङ्मा ग्लायेत् ग्लायेताम् ग्लायेयुः आदि रूप हुन्छन् ।

**वाऽन्यस्येति–** घुसंज्ञक धातु र मास्था आदि धातुदेखि भिन्न संयोग आदिमा हुने धातुका स्थानमा एत्व विकल्पले होस्, आर्धधातुकसंज्ञक कित् लिङ् पर भएमा ।

**ग्लेयात्/ग्लायात्–** ग्ला धातुदेखि आशीर्लिङ्, लकारका स्थानमा तिप्, यासुट्, तिका इकारको

**४९४. यमरमनमातां सक् च** ७।२।७३।।

एषां सक् स्यादेभ्यः सिच इट् स्यात्परस्मैपदेषु । अग्लासीत् । अग्लास्यत् ॥ **ह्वृ** कौटिल्ये ॥ १८ ॥ ह्वरति ॥

**४९५. ऋतश्च संयोगादेर्गुणः** ७।४।१०।।

ऋदन्तस्य संयोगादेरङ्गस्य गुणो लिटि । उपधाया वृद्धिः । जह्वार । जह्वरतुः ।

---

लोप भयो, संयोगादि सकार लोप् भयो, 'ग्लायात्' यहाँ "वान्यस्य संयोगादेः"ले वैकल्पिक एत्व भयो, 'ग्लेयात्' नभएको पक्षमा 'ग्लायात्' यी दुई रूप सिद्ध भए । यस्तै प्रकारले एत्व भएको पक्ष र नभएको पक्षका रूपहरू सिद्ध गर्नू ।

**यमरमेति**– यम्, रम्, नम् धातु र आकारान्त धातुको सक् आगम होस्, यिनी धातुदेखि पर रहेका सिच्को इट् आगम पनि होस्, 'परस्मैपद' पर भएमा । सक् आगममा अकार र ककारको इत्संज्ञा हुन्छ । स् मात्र बाँकी रहन्छ त्यो सकार कित्त्वात् धातुको अन्ततर्फ हुन्छ ।

**अग्लासीत्**– लुङ्मा शित्को विवक्षा नहुनाले आत्व भएर ग्ला धातु भयो । ग्ला धातुदेखि लुङ्, अट्, तिप्, च्लि, सिच् भएपछि, "एकाच उपदेशे०"ले सिच्को इट् आगम निषेध भयो, तब "यमरमनमातां"ले सक् आगम र सिच्को इट् आगम भयो, 'अग्लास्+इस्+ति' भयो, तिका इकारको "इतश्च"ले लोप भयो, ईट्आगम भयो, 'अग्लास्+इस्+ईत्', "इट् इटि"ले सिच्का सकारको लोप भयो, दीर्घ एकादेश भयो, 'अग्लासीत्' सिद्ध भयो । तस्मा 'अग्लास्+इस्ताम्' अग्लासिस्ताम्, षत्व, ष्टुत्व अग्लासिष्टाम्, झिमा अग्लासिषुः, यस्तै प्रकारले अरू रूप सिद्ध गर्नु ।

**लुङ्का सबै रूप–**

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | अग्लासीत् | अग्लासिष्टाम् | अग्लासिषुः |
| मध्यमपुरुष | अग्लासीः | अग्लासिष्टम् | अग्लासिष्ट |
| उत्तमपुरुष | अग्लासिषम् | अग्लासिष्व | अग्लासिष्म |

**लृङ्मा**– अग्लास्यत्, अग्लास्यताम् अग्लास्यन्, आदि रूप बन्दछन् ।

**ह्वृ**– धातु बाङ्गो हुनु अर्थमा छ । (अनिट् अकर्मक)

**ह्वरति**– ह्वृ लट्, तिप्, शप्, गुण 'ह्वरति' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध हुन्छन् ।

**ऋतश्चेति**– ह्रस्व ऋकार अन्तमा हुने र संयोग आदिमा हुने अङ्गका स्थानमा गुण होस्, लिट् पर भएमा । "अलोऽन्त्यस्य" लगाएर गुण अन्त्य अल् ऋकारका स्थानमा हुन्छ ।

**जह्वार**– ह्वृ धातुदेखि लिट् भयो, लकारका स्थानमा तिप्, णल्, 'ह्वृ+अ' द्वित्व, 'ह्वृ+ह्वृ+अ' "उरत्"ले अभ्यासका ऋकारका स्थानमा अर् 'ह्वर्+ह्वृ+अ', हलादिशेष, 'ह+ह्वृ+अ', चुत्व, 'झ+ह्वृ+अ', जश्त्व, 'जह्वृ+अ' "सार्वधातुकार्ध०"लाई बाधेर "ऋतश्च संयोगादेः"ले गुण, 'जह्वर्+अ' "अत उपधायाः"ले वृद्धि भयो, 'जह्वार' सिद्ध भयो ।

**जह्वरतुः**– ह्वृ लिट्, तस्, अतुस्, द्वित्व, 'ह्वृ+ह्वृ+अतुस्', उरत् अर्, 'ह्वर्+ह्वृ+अतुस्' हलादिशेष 'ह+ह्वृ+अतुस्', चुत्व, 'झ+ह्वृ+अतुस्', जश्त्व, 'जह्वृ+अतुस्', "सार्वधातुका०"ले पाएको गुणको कित्त्वात्, "क्ङिति च"ले निषेध भएपछि, "ऋतश्च संयोगादेः"ले गुण भयो, 'जह्वर्+अतुस्', 'जह्वरतुः' सिद्ध भयो ।

जह्वरुः । जह्वर्थ । जह्वरथुः । जह्वर । जह्वार, जह्वर । जह्वरिव । जह्वरिम । ह्वर्ता ॥

**४९६. ऋद्धनोः स्ये ७।२।७०॥**

ऋतो हन्तेश्च स्यस्येट् । ह्वरिष्यति । ह्वरतु । अह्वरत् । ह्वरेत् ॥

**४९७. गुणोऽर्तिसंयोगाद्योः ७।४।२९॥**

अर्तेः संयोगादेर्ऋदन्तस्य च गुणः स्याद्यकि यादावार्धधातुके लिङि च । ह्वर्यात् । अह्वार्षीत् ।

---

**जह्वरुः**- 'ह्वृ+उस्' भएपछि, द्वित्वादि पूर्ववत् हुन्छ । अन्तमा गुण हुन्छ र 'जह्वरुः' सिद्ध हुन्छ ।

**जह्वर्थ**- 'ह्वृ+थ' यहाँ, "आर्धधातुकस्येड्वलादेः"ले पाएको इट्को "एकाच उपदेशे०"ले निषेध "कृसृभृवृ०"ले पाएको इट् "अचस्तास्वत्०"ले निषेध भएपछि, भारद्वाजका मतमा पनि ऋदन्त धातु हुनाले इट् भएन, द्वित्वादि पूर्ववत् भयो, अन्तमा गुण भयो, 'जह्वर्थ' सिद्ध भयो ।

**जह्वरथुः, जह्वर**- यी दुई स्थलमा पनि पूर्ववत् अतुस्मा जस्तै प्रक्रिया भएर रूप सिद्ध हुन्छन् ।

**जह्वार/जह्वर**- उत्तमपुरुष णल्मा प्रथमपुरुषको णल्मा जस्तै हुन्छ । अन्तमा वैकल्पिक णित्त्व हुनाले णित् भएको पक्षमा "अत उपधायाः"ले वृद्धि भयो, 'जह्वार' सिद्ध भयो । णित् नभएको पक्षमा वृद्धि भएन 'जह्वर' भयो र यी दुई रूप सिद्ध भए ।

**जह्वरिव, जह्वरिम**- व, म, मा, "आर्धधातुस्येड्"ले पाएको इट् "एकाच उपदेशे०"ले निषेध हुन्छ, अनि "कृसभवृ०"को नियमले पाएको इट् कसैले निषेध गर्दैन, द्वित्वादिकार्य पूर्ववत् हुन्छ र 'जह्वरिव', 'जह्वरिम' यी रूप हुन्छन् ।

**ह्वर्ता**- ह्वृ धातुदेखि लुट्, पूर्ववत् तिबादि 'ह्वृ+तास्ति', तासि प्रत्ययको "आर्धधातुकेस्येड्०"ले पाएको इट् "एकाच०"ले निषेध, "सार्वधातुकार्ध०"ले ऋकारका स्थानमा अर्गुण, 'ह्वर्तास्ति' तिका स्थानमा डाआदेश टिलोप भयो, 'ह्वर्ता' सिद्ध भयो । यस्तै अरू रूपमा पनि यही प्रक्रिया हुन्छ ।

**ऋद्धनोरिति**- ह्रस्व ऋकारान्तधातु र हन्धातुदेखि पर रहेका स्य प्रत्ययको इट् आगम होस् ।

**ह्वरिष्यति**- ह्वृ धातुदेखि लृट्, पूर्ववत् तिबादि, 'ह्वृ+स्यति', "आर्धधातुकस्येड्०"ले पाएका इट्आगमको "एकाच०"ले निषेध "ऋद्धनोःस्ये"ले इट्आगम 'ह्वृ+इस्यति', गुण, षत्व, 'ह्वरिष्यति' सिद्ध भयो । यस्तै प्रकारले सबै रूप बन्दछन् । **लोट्मा** ह्वरतु आदि, **लङ्मा** अह्वरत् आदि, **विधिलिङ्मा** ह्वरेत् आदि रूप पूर्ववत् बन्दछन् ।

**गुण इति**- ऋ धातु र संयोग आदिमा हुने ह्रस्व ऋकारान्त धातुका स्थानमा गुण होस्, यक् प्रत्यय पर भएमा र यकार आदिमा हुने आर्धधातुक लिङ् परभएमा पनि ।

यो गुण "अलोऽन्त्यस्य" लगाएर ऋका स्थानमा हुन्छ । यासुट् ङित् हुनाले गुणनिषेध भएपछि, यस सूत्रले गुण हुन्छ । "लिङाशिषि"ले आशीर्वाद अर्थको लिङ् आर्धधातुकसंज्ञक हुन्छ भन्ने कुरा स्पष्ट नै छ ।

**ह्वर्यात्**- ह्वृ धातुको लिङ्मा पूर्ववत् 'ह्वृ+यास्+ति' भएपछि, ह्वृका ऋकारका स्थानमा "सार्वधातुकार्ध०"ले पाएको गुण "क्ङिति च"ले निषेध भयो, अनि "गुणोऽर्तिसंयोगाद्योः"ले गुण भयो, 'ह्वर्यास्ति' तिका इकारको "इतश्च"ले लोप, सकारको संयोगादिलोप भयो, 'ह्वर्यात्' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध गर्नू ।

**अह्वार्षीत्**- ह्वृ लुङ्, अट्, तिप्, च्लि, सिच्, 'अह्वृ+स्+ति' इट्निषेध गुणलाई बाधेर "सिचि वृद्धिः परस्मैपदेषु"ले वृद्धि 'अह्वार्+स्+ति' तिका इकारको लोप "अस्तिसिचो०"ले इट्

अह्वरिष्यत् ॥ **श्रु** श्रवणे ॥१९॥

**४९८. श्रुवः शृ च ३।१।१४॥**

श्रुवः शृ इत्यादेशः स्यात् श्नुप्रत्ययश्च । शृणोति ॥

**४९९. सार्वधातुकमपित् १।२।४॥**

अपित्सार्वधातुकं ङिद्वत् । शृणुतः ॥

**५००. हुश्नुवोः सार्वधातुके ६।४।८७॥**

हुश्नुवोरनेकाचोऽसंयोगपूर्वस्योवर्णस्य यण् स्यादचि सार्वधातुके ॥

---

आगम 'अह्वार्+स्+ईत्', 'अह्वासीत्' षत्व 'अह्वार्षीत्' सिद्ध भयो । यस्तै अरू रूप पनि जान्नु । यहाँ "सिचि वृद्धिः परस्मैपदेषु"ले वृद्धि गर्ने विशेष कार्य छ । रेफ इण् प्रत्याहारमा पर्ने हुनाले रेफदेखि पर रहेका सकारको षत्व कार्य पनि यहाँ विशेष छ ।

**लुङ्का सबै रूप–**

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | अह्वार्षीत् | अह्वार्ष्टाम् | अह्वार्षुः |
| मध्यमपुरुष | अह्वार्षीः | अह्वार्ष्टम् | अह्वार्ष्ट |
| उत्तमपुरुष | अह्वार्षम् | अह्वार्ष्व | अह्वार्ष्म |

**अह्वरिष्यत्**– लृङ्मा 'अह्वृ+स्य+ति' भएपछि स्य प्रत्ययको इट् आगमको "एकाच०"ले निषेध गरेपछि, "ऋद्धनोःस्ये"ले इट् आगम, गुण भयो, तिका इकारको लोप भयो, षत्व भयो, 'अह्वरिष्यत्' सिद्ध भयो । लृङ्का अरू रूप पनि यसै प्रकारले सिद्ध हुन्छन् ।

**श्रु इति**– श्रु धातु सुन्नु अर्थमा छ । (सेट् सकर्मक)

**श्रुव इति**– श्रु धातुका स्थानमा शृ आदेश होस्, श्नु प्रत्यय पनि होस्, कर्ता अर्थमा विधान गरिएको सार्वधातुक संज्ञक प्रत्यय पर भएमा । श्नुका शकारको "लशक्वतद्धिते"ले इत्संज्ञा हुन्छ ।

**शृणोति**– श्रु धातुदेखि लट्, तिप्, 'श्रु+ति' भयो, कर्तरि शप्ले शप् पायो, बाधेर "श्रुवः शृ च"ले शृ आदेश र श्नु प्रत्यय भयो, 'शृ+नु+ति' शृनुका उकारका स्थानमा 'सार्वधातुकार्ध धातुकयोः'ले गुण भयो, 'शृनोति', "ऋवर्णान्नस्य णत्वं वाच्यम्"ले नकारको णत्व भयो, 'शृणोति' सिद्ध भयो । शृका ऋकारका स्थानमा पनि "सार्वधातुकार्धधातुकयोः"ले गुण पाउँछ, नुलाई "सार्वधातुकमपित्" उत्तरसूत्रले ङित्वद्भाव गरेको हुनाले 'क्ङिति च'ले गुणनिषेध हुन्छ । (अतः यो 'सार्वधातुकमपित्' भन्ने सूत्र 'शृणोति' यो रूप भन्दा अगाडि नै राख्नु ठीक हुन्थ्यो । तर ग्रन्थकारले जसरी राखेका थिए त्यसको हेरफेर यहाँ गरिएन ।)

**सार्वधातुकेति**– पित्भिन्न सार्वधातुक ङित् जस्तो होस् ।

**शृणुतः**– श्रु धातु लट्, लट्का स्थानमा तस् भयो, शप्लाई बाधेर "श्रुवः शृ च"ले शृआदेश र श्नु प्रत्यय भयो, 'शृ+नु+तस्' भयो, "सार्वधातुकमपित्"ले पित्भिन्न सार्वधातुक हुनाले तस्को र नु को ङिद्वद्भाव भयो, अब शृनुका उकारका स्थान पाएको गुण पर ङित् प्रत्यय तस् हुनाले 'क्ङिति च'ले निषेध भयो, पुनः शृका स्थानमा गुण पायो, त्यहाँ पनि 'क्ङिति च'ले निषेध भयो, गुण भएन, "ऋवर्णान्नस्य"ले नकारका स्थानमा णकार भयो, 'शृणुतस्' यहाँ रुत्व, विसर्ग भयो, 'शृणुतः' सिद्ध भयो ।

**हुश्नुवोरिति**– हु धातु र श्नु प्रत्यय अन्तमा हुने, अनेकाच् र संयोग पूर्वमा नहुने अङ्गका स्थानमा यण् होस्, अच् आदिमा हुने सार्वधातुक प्रत्यय पर भएमा । यो उवङ्को अपवादसूत्र

शृण्वन्ति । शृणोषि । शृणुथः । शृणुथ । शृणोमि ॥

**५०१. लोपश्चास्यान्यतरस्यां म्वोः ६।४।१०७॥**

असंयोगपूर्वस्य प्रत्ययोकारस्य लोपो वा म्वोः परयोः । शृण्वः, शृणुवः । शृण्मः, शृणुमः । शुश्राव । शुश्रुवतुः । शुश्रुवुः । शुश्रोथ । शुश्रुवथुः । शुश्रुव । शुश्राव, शुश्रव । शुश्रुव । शुश्रुम । श्रोता ।

---

हो । संयोग पूर्वमा हुने श्नु प्रत्यय, आप्नुवन्ति आदि ठाउँमा पाइन्छ र "अचिश्नुधातुभ्रुवां०"मा श्नु, पढ्नु चरितार्थ हुन्छ, अन्यत्र यो सूत्रले "अचिश्नुधातुभ्रुवां०"लाई बाध्दछ ।

**शृण्वन्ति**– श्रुलट्, झि, शृ आदेश र श्नु प्रत्यय, 'शृ+नु+झि', "झोन्तः"ले अन्त आदेश, 'शृनु+अन्ति' यहाँ ङित्त्वाद् गुणनिषेध भएपछि, "अचिश्नुधातुभ्रुवां०"लाई बाधेर "हुश्नुवोः सार्वधातुके"ले श्नु प्रत्ययान्त संयोगपूर्वमा नहुने अनेकाच् अङ्ग 'शृनु'का स्थानमा यण् पाएमा "अलोऽन्त्यस्य"लाएर उकार स्थानमा यण हुँदा आन्तरतम्यात् वकार भयो, 'शृन्वन्ति', श्नु प्रत्यय ङित् हुनाले शृका ऋकारका स्थानमा "सार्वधातुकार्ध०"ले पाएको गुणनिषेध भयो, णत्व भयो, 'शृण्वन्ति' सिद्ध भयो ।

**शृणोषि**– पूर्ववत् 'शृनोसि'भएपछि णत्व, षत्व भयो, 'शृणोषि' सिद्ध भयो ।

**शृणुथः, शृणुथ**– थस्, थमा ङित्त्वाद् गुणनिषेध भयो ।

**शृणोमि**– 'शृ+नु+मि', 'शृनोमि', 'शृणोमि' सिद्ध भयो ।

**लोप इति**– संयोग पूर्वमा नहुने प्रत्ययका उकारको लोप होस् म र व पर भएमा ।

**शृण्वः/शृणुवः**– वस्मा 'शृणुवः' भएपछि शृणुको उकार संयोग पूर्वमा नहुने प्रत्ययको उकार हुनाले त्यसको "लोपश्चास्यान्यतरस्यां०"ले लोप भयो, 'शृण्वः' सिद्ध भयो । लोप नभएको पक्षमा 'शृणुवः' यस्तै रह्यो । यसरी दुई रूप सिद्ध भए ।

**शृण्मः/शृणुमः**– मस्मा पनि 'शृणुमः' भएपछि उक्त सूत्रले वैकल्पिक उकारलोप भयो, 'शृण्मः' सिद्ध भयो । लोप नभएमा 'शृणुमः' भयो । यसरी यी दुई रूप सिद्ध भए ।

**शुश्राव**– श्रु धातुदेखि लिट्, तिप्, णल्, 'श्रु+अ' द्वित्व, हलादिशेष, 'शुश्रु+अ' "अचोञ्णिति"ले वृद्धि आव् आदेश 'शुश्राव' सिद्ध भयो ।

**शुश्रुवतुः**– द्विवचनमा पूर्ववत् 'शुश्रु+अतुस्' भएपछि कित्वाद् गुणनिषेध "अचिश्नुधातुभ्रुवां०"ले उवङ् भयो, रुत्व, विसर्ग भयो, 'शुश्रुवतुः' सिद्ध भयो । 'शुश्रुवुः' पनि यस्तै प्रकारले सिद्ध हुन्छ ।

**शुश्रोथ**– श्रु धातुदेखि लिट्, सिप्, थल्, 'श्रु+थ' भएपछि, "आर्धधातुकस्येड्०"ले पाएको इट्आगम "एकाऽच०"ले निषेध भयो, क्रादिधातुभित्र पर्ने हुनाले "कृसृभृवृ०"ले पनि इट्को निषेध नै भयो, द्वित्व, अभ्यासकार्य र गुण भयो, 'शुश्रोथ' सिद्ध भयो ।

**शुश्रुवथुः**– 'शुश्रु+अथुस्', गुणनिषेध, उवङ्, 'शुश्रुवथुः' सिद्ध भयो ।

**शुश्राव/शुश्रव**– उत्तमपुरुषको णलमा णित्त्व वैकल्पिक हुनाले 'शुश्रु+अ' भएपछि, णित् भएको पक्षमा "अचोञ्णिति"ले वृद्धि भयो, आव् आदेश भयो, 'शुश्राव' णित् नभएको पक्षमा गुण भयो, अव् आदेश भयो, 'शुश्रव' यसरी दुई रूप सिद्ध भए ।

**शुश्रुव**– वस्मा 'श्रु+व' भएपछि, पूर्ववत् क्रादिनियमले इट्निषेध भयो, द्वित्व, अभ्यासकार्य भयो, 'शुश्रुव' सिद्ध भयो ।

**शुश्रुम**– मस्मा पनि 'श्रु+म' पूर्ववत् प्रक्रिया भएपछि, 'शुश्रुम' सिद्ध भयो । "इति शुश्रुम धीराणां ये न स्तद्विचचक्षिरे" (ईशावास्योपनिषद् )

**श्रोता**– श्रु लुट्, तिप्, तासि प्रत्यय, इट्निषेध 'श्रोतास्ति' यहाँ, डा आदेश टिलोप भयो,

श्रोष्यति । शृणोतु, शृणुतात् । शृणुताम् । शृण्वन्तु ॥

**५०२. उतश्च प्रत्ययादसंयोगपूर्वात् ६।४।१०६॥**

असंयोगपूर्वात्प्रत्ययोतो हेर्लुक् । शृणु, शृणुतात् ।

---

'श्रोता' सिद्ध भयो । यस्तै प्रकारले श्रोतारौ, श्रोतारः आदि रूप पनि सिद्ध हुन्छन् ।

**श्रोष्यति**– श्रु लृट्, तिप्, स्य, इट्निषेध, "सार्वधातुका०"ले गुण, षत्व, 'श्रोष्यति' सिद्ध भयो । यस्तै प्रकारले श्रोष्यतः, श्रोष्यन्ति आदि रूप हुन्छन् ।

लोट्को तिप्मा र सिप्मा विध्यादि अर्थ र आशीः अर्थमा फरक रूप हुने हुँदा साधन प्रक्रिया अलग गर्नुपर्छ । अन्यत्र मिलितरूपमा गरे हुन्छ भन्ने कुरा भू धातुमा नै भनिएको छ । यहाँ पनि तदनुरूप साधनप्रक्रिया देखाइन्छ ।

**शृणोतु**– श्रु धातुदेखि विध्यादि अर्थमा लोट् लकार भयो, लका स्थानमा ति भयो, शप्लाई बाधेर "श्रुव शृ च"ले श्नु आदेश र श्नुप्रत्यय भयो, 'शृनु+ति' "एरुः"ले उत्व, 'शृनुतु' भएपछि, नुका उकारका स्थानमा गुण भयो, णत्व भयो, 'शृणोतु' भयो ।

**शृणुतात्/शृणोतु**– आशी अर्थमा लोट् भयो, पूर्ववत् 'शृनुतु' भएपछि, "तुह्योस्तातङ्०"ले वैकल्पिक तातङ् आदेश भयो, 'शृनुतात्' भयो, तातङ्मा ङित्व हुनाले गुणनिषेध भयो, णत्व भयो, 'शृणुतात्' सिद्ध भयो । तातङ् नभएको पक्षमा 'शृनुतु' यहाँ नुका उकारको गुण भएर ओकार भयो, णत्व भयो । 'शृणोतु' भयो । यसरी विध्यादि अर्थमा 'शृणोतु' एकरूप आशीर्वाद अर्थमा 'शृणुतात्', 'शृणोतु' दुई रूप हुन्छन् । दुवै लोटको मिश्रितरूप प्रथमपुरुष एकवचनमा 'शृणोतु', 'शृणुतात्' हुन्छन् ।

प्रथमपुरुष द्विवचन र बहुवचनमा विध्यादि अर्थ र आशीर्वाद अर्थमा फरक नहुने हुनाले संयुक्त साधनप्रक्रिया गरे पनि हुन्छ । यो कुरा भ्वादिको शुरुमै भू धातुमा पनि भनिएको छ ।

**शृणुताम्**– शृ धातुदेखि विध्यादि एवं आशीर्वाद अर्थमा लोट् भयो तस् भयो "लोटो लङ्वत्" लाएर "तस्थस्थमिपां०"ले तस्का स्थानमा ताम् भयो, पूर्ववत् शृ आदेश श्नु प्रत्यय भयो, ङित्वाद् गुण भएन, णत्व भयो, 'शृणुताम्' सिद्ध भयो ।

**शृण्वन्तु**– श्रु धातुदेखि विध्यादि र आशीर्वाद अर्थमा लोट्, झि, अन्ति, पूर्ववत् शृ आदेश, श्नु प्रत्यय, "हुश्नुवोः०"ले यण्, णत्व, 'शृण्वन्ति' भएपछि "एरुः"ले उत्व भयो, 'शृण्वन्तु' सिद्ध भयो ।

**उतश्चेति**– संयोगपूर्वमा नहुने प्रत्ययको उकारदेखि पररहेका हिको लुक् होस् ।

सिप्मा पनि विध्यादि अर्थमा र आशीर्वाद अर्थमा रूप फरक हुने हुँदा अलग अलग रूपमा साधन प्रक्रिया देखाइन्छ ।

**शृणु**– श्रु धातुदेखि विध्यादि अर्थमा लोट्, सिप्, सिप्का स्थानमा हि, शप्लाई बाधेर श्रुका स्थानमा शृ आदेश, श्नु प्रत्यय भयो, 'शृनु+हि' भयो, हि अपित् हुनाले ङित् छ र शृनुका उकारका स्थानमा गुण भएन, "उतश्च प्रत्ययात्०"ले हिको लुक् भयो, णत्व भयो, 'शृणु' सिद्ध भयो ।

**शृणुतात्/शृणु**– श्रु धातुदेखि आशीर्वाद अर्थको लोट्मा पूर्ववत् प्रक्रिया भएर 'शृनुहि' भएपछि, "उतश्च प्रत्ययात्"लाई बाधेर हिका स्थानमा तातङ् भयो, णत्व भयो, 'शृणुतात्' तातङ् नभएका पक्षमा "उतश्च प्रत्ययात्०"ले हिको लुक् भयो, 'शृणु' सिद्ध भयो । यसरी विध्यादि लोट्मा 'शृणु'मात्र एक रूप भयो । आशीर्वाद अर्थमा 'शृणुतात्', 'शृणु' दुई रूप भए । दुवै लोट्का सम्मिलित रूप लेख्दा भन्दा 'शृणु/शृणुतात्' लेखिन्छ, भनिन्छ । णत्व गर्ने सूत्र त्रिपादी भएकोले अरू कार्य गरिसकेपछि णत्व गर्नु ठीक हुन्छ भन्ने आशयले णत्व पछाडि गरिएको हो । प्रक्रियालाघवापेक्षया पहिले णत्व गरेर शृणुहि भएपछि तातङ् लुक् गरे पनि हुन्छ ।

शृणुतम् । शृणुत । गुणावादेशौ शृणवानि । शृणवाव । शृणवाम । अशृणोत् । अशृणुताम् । अशृण्वन् । अशृणोः । अशृणुतम् । अशृणुत । अशृणवम् । अशृण्व, । अशृण्म, अशृणुम । शृणुयात् । शृणुयाताम् । शृणुयुः । शृणुयाः । शृणुयातम् । शृणुयात । शृणुयाम् । शृणुयाव । शृणुयाम । श्रूयात् । अश्रौषीत् ।

---

**शृणुतम्, शृणुत**– थस् र थमा यी दुई रूप पूर्ववत् सिद्ध हुन्छन् ।

**शृणवानि**– शृ लोट्, मिप्, नि, शृ आदेश, श्नु प्रत्यय, 'शृनु+नि' आट् आगम, 'शृणु+आनि', गुण, अव्आदेश, 'शृनवानि', णत्व, 'शृणवानि', सिद्ध भयो ।

शृणवाव, शृणवाम पनि यसैगरी सिद्ध हुन्छन् ।

**अशृणोत्**– श्रुलङ् अट्, तिप्, शृआदेश र श्नुप्रत्यय, शृका ऋकारको गुणनिषेध, नुका उकारको गुण, तिका इकारको इतश्चले लोप, णत्व भयो, 'अशृणोत्' सिद्ध भयो ।

**अशृणुताम्, अशृण्वन्**– द्विवचनमा ताम्, यो कित्त्व हुनाले गुणनिषेध भयो, 'अशृणुताम्' सिद्ध भयो । बहुवचनमा अन्त आदेश, गुणनिषेध, "हुश्नुवोः"ले यण्, इकारलोप, संयोगान्तलोप, 'अशृण्वन्' सिद्ध भयो ।

**अशृणोः**– सिप्मा सकारको विसर्ग भयो, 'अशृणोः' सिद्ध भयो । थस् थमा अशृणुतम्, अशृणुत यहाँ गुणनिषेध भयो ।

**अशृणवम्**– मिप्, अम्, गुण, अव् आदेश, 'अशृणवम्' सिद्ध भयो ।

**अशृण्व/अशृणुव**– वस्मा सलोप, गुणनिषेध वैकल्पिक उकारलोप 'अशृण्व', ऊकारलोप नभएको पक्षमा 'अशृणुव' यसरी यी दुई रूप सिद्ध भए । यस्तै मस्मा पनि 'अशृण्म', 'अशृणुम' यी दुई रूप हुन्छन् ।

**शृणुयात्**– विधिलिङ्मा 'श्रु+ति', 'शृणु+ति', यासुट् 'शृनु+यास्+ति', "लिङः सलोपो०"ले सलोप तिका इकारको "इतश्च"ले लोप संयोगादिलोप, शृनुका उकारको गुणनिषेध णत्व, 'शृणुयात्' सिद्ध भयो । यस्तै प्रकारले शृणुयाताम् आदि रूप पनि हुन्छन् ।

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | शृणुयात् | शृणुयाताम् | शृणुयुः |
| मध्यमपुरुष | शृणुयाः | शृणुयातम् | शृणुयात |
| उत्तमपुरुष | शृणुयाम् | शृणुयाव | शृणुयाम |

**श्रूयात्**– आशीर्लिङ् 'श्रु+ल्', 'श्रु+ति' आर्धधातुकत्वात् "श्रुवः शृ च" लागेन, यासुट् आगम 'श्रु+यास्ति' तिका इकारको "इतश्च"ले लोप, 'श्रु+यास्त्' संयोगादिलोप, "आकृत्सार्वधातुकयोः"ले श्रुका उकारको दीर्घ, 'श्रूयात्' सिद्ध भयो । यस्तै प्रकारले श्रूयास्ताम् आदि रूप पनि हुन्छन् ।

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | श्रूयात् | श्रूयास्ताम् | श्रूयासुः |
| मध्यमपुरुष | श्रूयाः | श्रूयास्तम् | श्रूयास्त |
| उत्तमपुरुष | श्रूयासम् | श्रूयास्व | श्रूयास्म |

**अश्रौषीत्**– श्रु धातुदेखि लुङ्, अट्, तिप्, च्लि, सिच्, सिच्को इट् निषेध, 'अश्रु+स+ति' "सिचि वृद्धिः०"ले वृद्धि 'अश्रौस्+ति' तिका इकारको 'इतश्च'ले लोप, ईट् आगम षत्व, 'अश्रौषीत्' सिद्ध भयो । यस्तै प्रकारले अन्यत्र पनि "सिचि वृद्धिः०"ले वृद्धि हुन्छ, षत्व हुन्छ, 'अश्रौष्टाम्' आदि रूप बन्दछन् ।

अश्रोष्यत् ॥ **गम्लृ** गतौ ॥२०॥

**५०३. इषुगमियमां छः ७।३।७७॥**

एषां छः स्यात् शिति । गच्छति । जगाम ॥

**५०४. गमहनजनखनघसां लोपः क्ङित्यनङि ६।४।९८॥**

एषामुपधाया लोपोऽजादौ क्ङिति न त्वङि । जग्मतुः । जग्मुः । जगमिथ, जगन्थ । जग्मथुः जग्म । जगाम, जगम ।

---

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अश्रौषीत् | अश्रौष्टाम् | अश्रौषुः |
| मध्यमपुरुष | अश्रौषीः | अश्रौष्टम् | अश्रौष्ट |
| उत्तमपुरुष | अश्रौषम् | अश्रौष्व | अश्रौष्म |

**अश्रोष्यत्**– लृङ्मा स्यको इट् निषेध र षत्व हुन्छ, 'अश्रोष्यत्' आदि रूप सिद्ध हुन्छन् । उपसर्गयोगमा-

**आशृणोति**– (भनेको मान्छ) "वचनेस्थित आश्रवः" इत्यमर ।

**प्रतिशृणोति**– (प्रतिज्ञा गर्छ ।)

**गम्लृ इति**– गम्लृ धातु हिड्नु अर्थमा छ । लृकारको इत्संज्ञा लोप हुन्छ । (अनिट् सकर्मक)

**इष्विति**– इष्, गम्, यम् धातुका अन्त्य अल्का स्थानमा छकार आदेश होस्, शित् प्रत्यय पर भएमा । यो सूत्र सार्वधातुक लकारमा मात्र लाग्छ अन्यत्र शित् प्रत्यय पर हुँदैन ।

**गच्छति**– गम् धातुदेखि लट् लकार आयो, लकारका स्थानमा तिप्, शप् प्रत्यय 'गम्+अ+ति' भएपछि, "इषुगमियमां०"ले गम्का मकारका स्थानमा छकार, "छे च"ले तुक् आगम, चुत्व भयो, वर्णमेलन भयो, 'गच्छति' सिद्ध भयो । यस्तै प्रकारले गच्छतः आदि रूप हुन्छन् ।

**जगाम**– गम् लिट्, तिप्, णल्, 'गम्+अ', 'गम्+गम्+अ', 'गगम्+अ', 'जगम्+अ्', 'जगाम' सिद्ध भयो ।

**गमहनेति**– गम्, हन्, जन्, खन्, घस् धातुका उपधाको लोप् होस्, अच् आदिमा हुने कित् ङित् आर्धधातुक संज्ञक प्रत्यय पर भएमा, अङ् पर भएमा त नहोस् ।

**जग्मतुः**– गम् लिट्, तस्, अतुस्, अतुस्को "लिट् च"ले आर्धधातुकसंज्ञा र "असंयोगाल्लिट्कित्"ले कित्त्व भयो, 'गम्+अतुस्', 'गम्+गम्+अतुस्', 'गगम्+अतुस्', 'जगम्+अतुस्' भएपछि "गमहनजनखनघसां०"ले कित् अजादि आर्धधातुकसंज्ञक प्रत्यय अतुस् पर हुनाले जगम्को उपधा(अकार)को लोप भयो, 'जग्मतुस्', सकारको रुत्व, विसर्ग, 'जग्मतुः' सिद्ध भयो ।

**जग्मुः**– गम् लिट्, तस्, तस्का स्थानमा उस्, 'गम्+उस्' पूर्ववत् 'जगम्+उस्' भएपछि पूर्ववत् उपधालोप भयो, रुत्व, विसर्ग भयो, 'जग्मुः' सिद्ध भयो ।

**जगमिथ/जगन्थ**– गम् लिट्, सिप्, थल्, 'गम्+थ' तासिमा नित्यानिट् अकारवान् धातु हुनाले वैकल्पिक इट् आगम, द्वित्वादि, 'जगमिथ' सिद्ध भयो । इट् आगम नभएको पक्षमा द्वित्वादि 'जगम्+थ्', "नश्चापदान्तस्य०"ले अनुस्वार "अनुस्वारस्य ययि०"ले परसवर्ण 'जगन्थ' सिद्ध भयो ।

**जग्मथुः, जग्म**– अथुस् र अ पर भएमा 'जगम्+अथुस्', 'जगम्+अ' भएपछि "गमहन जगखनघसां०"ले उपधालोप भएर 'जग्मथुः', 'जग्म', सिद्ध भयो ।

**जगाम/जगम**– उत्तमपुरुषका णल्को णित्त्व वैकल्पिक हुनाले णित्व भएको पक्षमा वृद्धि

जग्मिव । जग्मिम । गन्ता ॥

**५०५. गमेरिट् परस्मैदेषु ७।२।५८॥**

गमेः परस्य सादेरार्धधातुकस्येट् स्यात् परस्मैपदेषु । गमिष्यति । गच्छतु । अगच्छत् । गच्छेत् । गम्यात् ॥

**५०६. पुषादिद्युताद्य्लृदितः परस्मैपदेषु ३।१।५५॥**

श्यन्विकरणपुषादेर्द्युतादेर्लृदितश्च परस्य च्लेरङ् परस्मैपदेषु । अगमत् ।

---

'जगाम', वृद्धि नभएको पक्षमा 'जगम' यसरी यी दुई रूप सिद्ध भए ।

**जग्मिव/जग्मिम**– व र म मा "कृसभृवृ०" नियम लाएर नित्य इट् आगम 'गम्+इ+व', 'गम्+इ+म' यहाँ द्वित्व, अभ्यासकार्य, उपधालोप भयो, 'जग्मिव', 'जग्मिम' यी रूप सिद्ध भए ।

**गन्ता**– लुट्मा 'गम्+तास्ति', इट्आगमको "एकाच०"ले निषेध, अरू कार्य पूर्ववत्, गम्का मकारका स्थानमा "नश्चापदान्तस्य०"ले अनुस्वार, "अनुस्वारस्य ययि०"ले परसवर्ण भयो, 'गन्ता' सिद्ध भयो । गन्तारौ, गन्तारः आदिरूप यसैगरी सिद्ध हुन्छन् ।

**गमेरिति**– गम् धातुदेखि पर रहेको दन्त्य सकार आदिमा हुने प्रत्ययको इट्आगम होस्, परस्मैपद परभएमा ।

**गमिष्यति**– गम् धातुदेखि लृट्, ति, स्यप्रत्यय, "आर्धधातुकस्येड्०"ले पाएको इट् "एकाच०"ले निषेध, परस्मैपद पर हुनाले स्यको "गमेरिट्०"ले इट् भयो, षत्व भयो, 'गमिष्यति' सिद्ध भयो । यस्तै प्रकारले 'गमिष्यतः', 'गमिष्यन्ति' आदिरूप सिद्ध हुन्छन् ।

**गच्छतु/गच्छतात्**- लोट्मा तिप्, शप् मकारका स्थानमा छकार, तुक्, चुत्व, तिका इकारको "एरुः"ले उत्व हुन्छ । आशीर्वाद अर्थमा वैकल्पिक तातङ्आदेश पनि हुन्छ । रूपसिद्धि प्रक्रिया पूर्ववत् स्मरण गर्नू । लङ्मा- अगच्छत् आदिरूप र विधिलिङ्मा गच्छेत् आदि रूप हुन्छन् । साधन प्रक्रिया पूर्ववत् स्मरण गर्नू ।

**गम्यात्**– आशीर्लिङ्मा शित् पर नहुनाले छत्व भएन, 'गम्यास्ति', 'गभ्यास्त्', 'गम्यात्' सिद्ध हुन्छ । तस् आदि विभक्तिमा गम्यास्ताम्, गम्यासुः आदि रूप हुन्छन् ।

**पुषादीति**– श्यन् विकरण पुषादि धातु द्युतादि धातु र लृको इत्संज्ञा हुने धातुदेखि पर रहेका च्लिका स्थानमा अङ् होस् परस्मैपद परभएमा । अङ्का ङकारको इत्संज्ञालोप हुन्छ, अ बाँकी रहन्छ । यहाँ श्यन्विकरण भनेको–दिवादिका पुषादि धातु भनेको हो ।

**अगमत्**– गम् धातुदेखि लुङ्, अट्, ति, 'अगम्+ति', च्लि, 'अगम्+च्लि+ति', भएपछि, यो लृकारको इत्संज्ञा हुने धातु परस्मैपद पर छ र च्लिका स्थानमा "च्लेः सिच्"लाई बाधेर "पुषादिद्युताद्य्लृदितः०"ले अङ् भयो, 'अगम्+अति', तिका इकारको 'इतश्च"ले लोप 'अगमत्' सिद्ध भयो । यस्तै प्रकारले अरू विभक्तिमा पनि च्लिका स्थानमा चङ् हुन्छ र रूप सिद्ध हुन्छन् ।

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | अगमत् | अगमताम् | अगमन् |
| मध्यमपुरुष | अगमः | अगमतम् | अगमत |
| उत्तमपुरुष | अगमम् | अगमाव | अगमाम |

अगमिष्यत् ॥

इति परस्मैपदिनः ॥

**अथात्मनेपदिनः**

**एध वृद्धौ ॥१॥**

**५०७. टित आत्मनेपदानां टेरे ३।४।७९॥**

टितो लस्यात्मनेपदानां टेरेत्वम् । एधते ॥

**५०८. आतो ङितः ७।२।८१॥**

अतः परस्य ङितामाकारस्य इय् स्यात् । एधेते ।

---

**अगमिष्यत्**– गम् लृङ्, अट्, तिप्, 'अगम्+ति' भएपछि, 'आर्धधातुकस्येड्०'ले पाएको इट् "एकाच उपदेशे०"ले निषेध, "गमेरिट्०"ले इट् आगम तिका इकारको "इतश्च"ले लोप, षत्व भयो, 'अगमिष्यत्' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि हुन्छन् ।

**उपसर्गको योगमा–** अपगच्छति (हट्छ) संगच्छति (मिल्छ)
अनुगच्छति (पछि लाग्छ) अवगच्छति (जान्दछ)
निर्गच्छति (निस्कन्छ) आगच्छति (आउँछ)
अधिगच्छति (जान्दछ, पाउँछ) उद्गच्छति (उँभो लाग्छ)
अभिगच्छति (संमुख जान्छ) उपगच्छति (समीप जान्छ)

*इत्यादि अर्थ हुन्छन् ।*

भ्वादिका परस्मैपदी धातु सकिए ।

**अब आत्मनेपदी धातुको आरम्भ गरिन्छ ।**

**एध** धातु बढ्नु अर्थमा छ । अकारको इत्संज्ञा र लोप हुन्छ । अकार अनुदात्त हो । (सेट् अकर्मक)

**टित इति**– टित् लकारसम्बन्धी आत्मनेपदका टिका स्थानमा एत्व होस् । टित्लकार भन्नाले लोकमा लट्, लिट्, लुट् र लृट् लोट् हुन् वेदमा लेट् पनि हुन्छ ।

**एधते**– एध् धातुदेखि लट्, 'एध्+ल्' भयो, लकारका स्थानमा "तिप्तस्झि०"ले सबै तिङ् पाएकोमा यो अनुदात्तको इत्संज्ञा हुने धातु हुनाले, "अनुदात्तङित०"ले आत्मनेपद तङ् पायो, अनि पूर्ववत् "शेषे प्रथमः"ले प्रथमपुरुष "द्व्येकयोः०"ले एकत्वसंख्या बुझिंदामा प्रथमपुरुषको एकवचन त आयो, 'एध्+त' भयो, तलाई "तिङ्-शित्सार्वधातुकम्"ले सार्वधातुकसंज्ञा भयो, "कर्तरि शप्"ले शप् प्रत्यय, 'एधत' भयो, "टित आत्मनेपदानां०"ले टित्लकारसम्वन्धी आत्मनेपद तको टि-अकारका स्थानमा एकार भयो, 'एधते' सिद्ध भयो ।

**आत इति**– ह्रस्व अकारदेखि पर रहेका ङित् विभक्तिसम्बन्धी आकारका स्थानमा इय् आदेश होस् ।

**एधेते**– एध् धातुदेखि लट्, आत्मनेपद, प्रथमपुरुष, द्वित्वसंख्या बुझिंदामा द्विवचन आताम् आयो, शप् प्रत्यय भयो, 'एध+आताम्' भयो, आताम्लाई "सार्वधातुकमपित्"ले ङिद्वद्भाव भयो,

एधन्ते ॥

**५०९. थासः से ३।४।८०॥**

टितो लस्य थासः से स्यात्। एधसे। एधेथे। एधध्वे। अतो गुणे। एधे। एधावहे। एधामहे ॥

**५१०. इजादेश्च गुरुमतोऽनृच्छः ३।१।३६॥**

इजादिर्यो धातुर्गुरुमानृच्छत्यन्यस्तत आम् स्याल्लिटि ॥

**५११. आम्प्रत्ययवत्कृञोऽनुप्रयोगस्य १।३।३६॥**

आम्प्रकृत्या तुल्यमनुप्रयुज्यमानात् कृञोऽप्यात्मनेपदम् ॥

---

अनि "आतो ङितः"ले एधको ह्रस्वं अकारदेखि पररहेको ङिद्विभक्तिसम्बन्धी छ आताम्को आकार र त्यसका स्थानमा इय् आदेश भयो, गुण भयो, 'एधेय्+ताम्', "लोपो व्योर्वलि"ले यकारको लोप भयो, 'एधेताम्', "टित आत्मनेपदानां०"ले टि (आम्)को एत्व भयो, 'एधेते' सिद्ध भयो।

**एधन्ते**– एध् धातुदेखि लट् लकार भयो, आत्मनेपद, प्रथमपुरुषको बहुत्व बुझिंदामा बहुवचन झ आयो, झका स्थानमा, "झोऽन्तः"ले अन्तआदेश भयो, 'एध्+अन्त' भयो, शप् भयो, पररूप भयो, 'एधन्त', "टित आत्मनेपदानां टेरे"ले अकारका स्थानमा एकार भयो, 'एधन्ते' सिद्ध भयो।

**थास इति**– टित् लकारसम्बन्धी आत्मनेपदका थास्का स्थानमा से आदेश होस्।

**एधसे**– एध् धातुदेखि लट् लकार भयो, लट्का स्थानमा, "युष्मद्युपदे०"ले मध्यमपुरुष एकवचन थास् भयो, 'एध्+थास्' "थासः सेः"ले थास्का स्थानमा से आदेश भयो, शप् प्रत्यय भयो, 'एधसे' सिद्ध भयो।

**एधेथे**– एध् धातुदेखि लट् मध्यमपुरुष, द्विवचन आथाम् आयो, 'एध्+आथाम्' भयो, शप्प्रत्यय भयो, 'एध+आथाम्' भयो, "आतो ङितः"ले आथाम्का आकारका स्थानमा इय् भयो, 'एध+इय्+थाम्' भयो, गुण भयो, 'एधेय्+थाम्' भयो, यकारको "लोपो व्योर्वलि"ले लोप भयो, 'एधेथाम्' भयो, "टित आत्मनेपदानां०"ले आम्का स्थानमा एकार भयो, 'एधेथे' सिद्ध भयो।

**एधध्वे**– एध् धातुदेखि लट्लकार भयो, लकारका स्थानमा आत्मनेपद, मध्यमपुरुषको बहुवचन ध्वम् आयो, 'एध्+ध्वम्' शप् भयो, 'एधध्वम्', "टित आत्मनेपदानां०"ले टिका स्थानमा एत्व, भयो,'एधध्वे' सिद्ध भयो।

**एधे**- एध् धातुदेखि लट् लकार भयो, लकारका स्थानमा 'तङानावात्मनेपदम्'ले आत्मनेपद "अस्मद्युत्तमः"ले उत्तमपुरुष, एकत्वसंख्याविशिष्टरूप अर्थ बुझिंदामा एकवचन इट् भयो, शप् भयो, 'एध+इ' भयो, इका स्थानमा "टित आत्मनेपदानां०"ले एत्व भयो, 'एध+ए', "अतो गुणे"ले पररूप भयो, 'एधे' सिद्ध भयो।

**एधावहे**– एध् धातुदेखि लट्, उत्तमपुरुष, द्विवचन वहि भयो, शप् भयो, 'एध+वहि', वहिका इकारका स्थानमा "टित आत्मनेपदानां"ले एत्व, 'एध+वहे', "अतो दीर्घो यञि"ले एधका अकारका स्थानमा दीर्घआकार भयो, 'एधावहे' सिद्ध भयो।

**एधामहे**– एध् लट्, महि, शप्, महिका इकारका स्थानमा एकार "अतो दीर्घो०"ले दीर्घ, 'एधामहे' सिद्ध भयो।

**इजादेरिति**– इच् आदिमा हुने जो धातु गुरुवर्णयुक्त छ र ऋच्छधातुदेखि भिन्न छ त्यसदेखि आम् प्रत्यय होस् लिट् पर भएमा।

**आम्प्रत्ययवदिति**– आम् प्रत्ययका प्रकृतिले तुल्य, पछि प्रयोग हुने कृ धातुदेखि आत्मनेपद

आम्प्रत्ययो यस्मादित्यतद्गुणसंविज्ञानो बहुव्रीहिः ।

**५१२. लिटस्तझयोरेशिरेच् ३।४।८१॥**

लिडादेशयोस्तझयोरेश् इरेच् एतौ स्तः । एधाञ्चक्रे ।

---

र परस्मैपद होस् ।

**आम्प्रत्ययो यस्मादिति**– 'आम्प्रत्यय' यस पदमा आम् प्रत्ययो यस्मात्, यस्तो अतद्गुणसंविज्ञान बहुव्रीहिसमास भएको छ । बहुव्रीहिसमास दुई प्रकारका छन् एक तद्गुणसंविज्ञान, एक अतद्गुणसंविज्ञान यहाँ बहुव्रीहि समास अन्यपदार्थप्रधान हुने हुनाले तत्को अर्थ हो अन्यपदार्थ, अन्यपदार्थको गुण जहाँ जानिन्छ, त्यो तद्गुणसंविज्ञान बहुव्रीहि समास हो । जहाँ अन्यपदार्थको गुण जानिदैन, त्यो अतद्गुणसंविज्ञान बहुव्रीहि समास हो । तद्गुणसंविज्ञान बहुव्रीहिसमासको उदाहरण हो, 'लम्बकर्णमानय' लम्बौ कर्णौ यस्य (लामा छन् कान जसका) भन्दा लम्बकर्ण शब्द भएको छ । लामाकान भएकालाई ल्याऊ, भन्दा लामो कान भएको मानिस देख्दासाथ कान लामा देखेर यो लम्बकर्ण हो भन्ने बुझिन्छ । अतद्गुणसंविज्ञान बहुव्रीहि समासको उदाहरण हो 'दृष्टसागरमानय' यहाँ दृष्टः सागरो येन (देखेको छ समुद्र जसले) भन्दा 'दृष्ट सागर' शब्द भएको छ । समुद्र देखेको मानिस त्यहाँ आएपछि, यो समुद्र देखेको मानिस हो भन्ने उसको आकृतिबाट थाहा पाइँदैन । अतः यो हो अतद्गुणसंविज्ञान बहुव्रीहि समास । त्यस्तै यहाँ आम् प्रत्यय हुन्छ जुन धातुदेखि भन्दा अतद्गुणसंविज्ञान बहुव्रीहि समास भएको छ । यहाँ धातुको विशेषण भएर रहेको आम् प्रत्ययको आत्मनेपद हुने क्रियामा अन्वय हुँदैन । किनकि आम् प्रत्ययान्तदेखि आत्मनेपद हुँदैन र तद्गुणसंविज्ञान बहुव्रीहि हुनै सकेन । परन्तु कृ भू अस्को अनुप्रयोगमात्र हुन्छ यसैले यो अतद्गुणसंविज्ञान बहुव्रीहि भयो र वृत्तिमा आम्का प्रकृतिले तुल्य भन्ने अर्थ गरियो । एधाम् यहाँ प्रकृतिभूत धातु एध् छ त्यो आत्मनेपदी छ र त्यसबाट अनुप्रयोग हुने कृ धातुदेखि आत्मनेपद हुने भयो, त्यस्तै गोपायाम्को प्रकृति गुप्धातु परस्मैपदी छ । अतः त्यहाँ कृ धातुदेखि पनि पर परस्मैपद हुने भयो ।

**लिट इति**– लिट्का स्थानमा आदेश भएका त र झका स्थानमा एश् र इरेच् आदेश क्रमैले होऊन् ।

एश्का शकारको इत्संज्ञा हुन्छ । अतः "अनेकाल् शित्सर्वस्य"लाएर त जम्मैका स्थानमा ए हुन्छ । इरेच्मा चकारको इत्संज्ञा हुन्छ । यो अनेकाल् छ र झ पूरैका स्थानमा इरे आदेश हुन्छ ।

**एधाञ्चक्रे**– एध् धातुदेखि लिट्लकार भयो, 'एध्+ल्' भयो, "इजादेश्च०"ले यो एध्धातु इच् आदिमा हुने गुरुमान् धातु छ र यसदेखि आम् प्रत्यय भयो, 'एधाम्+ल्' ल्को "आमः"ले लुक् भयो, 'एधाम्' भयो, एधाम् यसदेखि "कृञ्चानुप्रयुज्यते लिटि"ले लिट् परहुने कृ धातु अनुप्रयोग भयो, 'एधाम्+कृ+ल्' भयो, लकारका स्थानमा कृ धातु ञित् हुनाले आत्मनेपद परस्मैपद दुवै पाएमा "आम्प्रत्ययवत्०"ले आम्को प्रकृति एध्धातु आत्मनेपदी हुनाले कृ धातुदेखि पनि आत्मनेपद प्रथमपुरुष एकवचन त भयो, 'एधाम्+कृ+त', तकास्थानमा "लिटस्तझयोः०"ले एश् आदेश भयो, शकारको इत्संज्ञा लोप भयो, शित्वात् त जम्मैको स्थानमा ए भयो, 'एधाम्+कृ+ए' भयो, "इको यणचि"ले यण् पाएमा "द्विर्वचनेऽचि०"ले निषेध भयो, द्वित्व भयो, 'एधाम्+कृ+कृ+ए', अत्व, 'एधाम्+कर्+कृ+ए' हलादिशेष 'एधाम्+क+कृ+ए' चुत्व 'एधाम्+चकृ+ए' यण्, 'एधाम्+चक्रे' [७९] एधाम्लाई पदसंज्ञा हुनाले "मोऽनुस्वारः"ले अनुस्वार "वा पदान्तस्य"ले परसवर्ण भएको पक्षमा 'एधाञ्चक्रे' सिद्ध भयो । नभएको पक्षमा 'एधांचक्रे' सिद्ध भयो ।

---

७९ 'एधाम्' यो लिडन्त हुनाले र लिट् कृत् हुनाले प्रत्ययलोपे लगाएर कृदन्तत्वात् सु आउँछ, "कृन्मेजन्तः"ले अव्यय-संज्ञा हुने हुनाले सुप्को लुक् हुन्छ । अतः 'एधाम्'को मकार पदान्त छ । अतः सर्वत्र वैकल्पिक परसवर्ण हुन्छ ।

एधाञ्चक्राते । एधाञ्चक्रिरे । एधाञ्चकृषे । एधाञ्चक्राथे ॥

**५१३. इणः षीध्वंलुङ्लिटां धोऽङ्गात् ८।३।७८॥**

इणन्तादङ्गात्परेषां षीध्वंलुङ्लिटां धस्य ढः स्यात् ॥ एधाञ्चकृढ्वे । एधाञ्चक्रे । एधाञ्चकृवहे । एधाञ्चकृमहे । एधाम्बभूव । एधामास । एधिता । एधितारौ । एधितारः । एधितासे । एधितासाथे ॥

**५१४. धि च ८।२।२५॥**

धादौ प्रत्यये परे सस्य लोपः । एधिताध्वे ॥

---

**एधाञ्चक्राते**– एध् लिट्, आम्, लिट्को लुक्, लिट्पर हुने कृ धातुको अनुप्रयोग, आत्मनेपद प्रथमपुरुष द्विवचन, आताम्, 'एधाम्+कृ+आताम्' पूर्ववत् द्वित्वादिकार्य यण् 'एधाम्+चक्राताम्' टिको एत्व, 'एधाम्+चक्राते' अनुस्वार, परसवर्ण, 'एधाञ्चक्राते' सिद्ध भयो ।

**एधाञ्चक्रिरे**– पूर्ववत् 'एधाम्+कृ+झ' यहाँ झको स्थानमा इरेच् आदेश भयो, द्वित्वादि पूर्ववत् भयो, 'एधाञ्चक्रिरे' सिद्ध भयो ।

**एधाञ्चकृषे**– पूर्ववत् 'एधाम्+कृ+ल्' लकारका स्थानमा "थासः से"ले से आदेश क्रादिनियमले इट्निषेध, द्वित्वादि, 'एधाञ्चकृसे' षत्व, 'एधाञ्चकृषे' सिद्ध भयो ।

**एधाञ्चक्राथे**– एधाञ्चक्राते जस्तै 'एधाञ्चक्राथे' सिद्ध हुन्छ ।

**इण इति**– इण् अन्तमा हुने अङ्गदेखि पर रहेका षीध्वम्संबन्धी लुङ्सम्बन्धी र लिट्सम्वन्धी धकारका स्थानमा ढकार होस् ।

**एधाञ्चकृढ्वे**– पूर्ववत् 'एधाम्+कृ+ध्वम्' यहाँ इट् आगम निषेध, द्वित्वादि, 'एधाम्+चकृ+ध्वम्' भएपछि, टिको एत्व, 'एधाम्+चकृ+ध्वे', "इणः षीध्वं०"ले इणन्त अङ्ग एधाम्चकृदेखि पर रहेको लिट्सम्बन्धी धकार हुनाले ध्वेका धकारको स्थानमा ढकार भयो, 'एधाम्चकृढ्वे' मकारको अनुस्वार, परसवर्ण भयो, 'एधाञ्चकृढ्वे' सिद्ध भयो ।

**एधाञ्चक्रे**– अरु पूर्ववत् 'एधाम्+चकृ+इ' यहाँ टि (इ) का स्थानमा एत्व, यण्, 'एधाञ्चक्रे' सिद्ध भयो ।

**एधाञ्चकृवहे**– पूर्ववत् 'एधाम्+कृवहि' यहाँ क्रादिनियमात् इट् आगम निषेध, द्वित्वादि, पूर्ववत्, टि(वहिको इकार)को एत्व, 'एधाञ्चकृवहे' सिद्ध भयो ।

**एधाञ्चकृमहे**– 'एधाम्+कृ+महि' यहाँ सबै कार्य वहिमा जस्तै भयो, 'एधाञ्चकृमहे' सिद्ध भयो ।

**एधाम्बभूव**– भू धातुको अनुप्रयोगमा 'एधाम्+भू+अ' द्वित्वादि कार्य, अनुस्वार वैकल्पिक परसवर्ण भएर, 'एधाम्बभूव' 'एधांबभूव' आदिरूप हुन्छन् ।

**एधामास**– अस्को अनुप्रयोगमा 'गोपायामास' जस्तै 'एधामास' इत्यादि रूप हुन्छन् ।

लुट्लकारको आत्मनेपद प्रथमपुरुष त, आताम्, झ,का स्थानमा पनि क्रमशः डा, रौ, रस्, आदेश हुने हुनाले लुट् प्रथम पुरुषका रूप परस्मैपदमा जस्तै हुन्छन् ।

**एधिता**– एध् लुट्, त, तासि प्रत्यय, इट् आगम 'एधितास्+त' तका स्थानमा "लुटः प्रथमस्य०"ले डा आदेश टिलोप 'एधिता' सिद्ध भयो ।

**एधितारौ, एधितारः**– आताम्का स्थानमा रौ आदेश 'एधितारौ' झमा 'एधितारः' पूर्ववत् प्रक्रिया हुन्छ ।

**एधितासे**– एधितास्से भएपछि "तासस्त्योर्लोपः"ले तास्का दन्त्य सकारको लोप भएर 'एधितासे' सिद्ध हुन्छ ।

**एधितासाथे**– 'एधितासाथाम्' भएपछि, एत्व भयो, 'एधितासाथे' सिद्ध भयो ।

**धिचेति**– धकार आदिमा हुने प्रत्यय पर भएमा दन्त्य सकारको लोप होस् ।

**एधिताध्वे**– पूर्ववत् 'एधितास्ध्वे' भएपछि "धिच"ले सकारको लोप भयो, 'एधिताध्वे' सिद्ध भयो ।

**५१५. ह एति ७।४।५२॥**

तासस्त्योः सस्य हः स्यादेति परे । एधिताहे । एधितास्वहे । एधितास्महे । एधिष्यते । एधिष्येते । एधिष्यन्ते । एधिष्यसे । एधिष्येथे । एधिष्यध्वे । एधिष्ये । एधिष्यावहे । एधिष्यामहे ॥

**५१६. आमेतः ३।४।९०॥**

लोट एकारस्याम् स्यात् । एधताम् । एधेताम् । एधन्ताम् ॥

**५१७. सवाभ्यां वामौ ३।४।९१॥**

सवाभ्यां परस्य लोडेतः क्रमाद् वामौ स्तः । एधस्व । एधेथाम् । एधध्वम् ॥

**५१८. एत ऐ ३।४।९३॥**

लोडुत्तमस्य एत ऐ स्यात् । एधै ।

---

**ह इति**– तासि प्रत्यय र अस् धातुका सकारका स्थानमा हकार होस् एकार पर भएमा ।

**एधिताहे**– उत्तमपुरुष एकवचन इट्मा 'एधितास्+इ' एत्व, 'एधितास्+ए' भएपछि "ह एति"ले सकारका स्थानमा हकार भयो, 'एधिताहे' सिद्ध भयो ।

**एधितास्वहे**– 'एधितास्+वहि' यहाँ टिको एत्व भयो, 'एधितास्वहे' सिद्ध भयो, यस्तै 'एधितास्महि'मा पनि टिको एत्व, हुन्छ र 'एधितास्महे' सिद्ध हुन्छ ।

**एधिष्यते**– एध् लृट्, त, स्य, स्यको इट्, एत्व, षत्व 'एधिष्यते' सिद्ध भयो । आताम् आदिमा यस्तै प्रकारले एधिष्येते इत्यादि रूप हुन्छन् । विशेष प्रक्रिया केही छैन । आत्मनेपदमा विध्यादि र आशीर्वाद अर्थका लोट्मा समान रूप हुन्छन् । सँगसँगै साधनप्रक्रिया गरे पनि हुन्छ ।

**आमेत इति**– लोट् लकारसम्बन्धी एकारका स्थानमा आम् होस् ।

**एधताम्**– एध् धातुदेखि "लोट् च"ले विध्यादि अर्थमा र "आशिषि लिङ्लाटौ"ले आशीर्वाद अर्थमा लोट् भयो, लकारका स्थानमा त भयो, 'एध्+त', शप्, एत्व, एधते भएपछि, "आमेतः"ले तेका एकारका स्थानमा आम् भयो, 'एधताम्' सिद्ध भयो ।

**एधेताम्**– एध् लोट्, आताम्, शप् प्रत्यय आदि भएर 'एधेते' भएपछि, "आमेत"ले तेका एकारका स्थानमा आम् भयो, 'एधेताम्' सिद्ध भयो ।

**एधन्ताम्**– एध् लोट्, झ, अन्त, शप् आदि भएर 'एधन्ते' भएपछि, ते का एकारका स्थानमा आम् भयो, 'एधन्ताम्' सिद्ध भयो ।

**सवाभ्यामिति**– सकार र वकारदेखि पर रहेका लोट् लकारसम्बन्धी एकारका स्थानमा क्रमैले व र अम् आदेश होऊन् ।

**एधस्व**– एध् लोट्, थास्, से, शप्, 'एधसे' भएपछि, "सवाभ्यां वामौ"ले सकारदेखि पररहेको सेका एकारका स्थानमा व भयो, 'एधस्व' सिद्ध भयो ।

**एधेथाम्**– 'एधेथे' भएपछि, "आमेतः"ले थेका एकारका स्थानमा आम् भयो, 'एधेथाम्' सिद्ध भयो ।

**एधध्वम्**– एध् लोट्, ध्वम्, शप्, 'एधध्वम्' "टित आत्मनेपदानां०"ले एत्व, 'एधध्वे', "सवाभ्यां वामौ"ले एकारका स्थानमा अम् भयो, 'एधध्वम्' सिद्ध भयो ।

**एत इति**– लोट् लकारसम्बन्धी उत्तमपुरुषका एकारका स्थानमा ऐ होस् ।

**एधै**– एध् लोट्, उत्तम पुरुष एकवचन इट्, शप्, 'एध+इ', एत्व, 'एध+ए', "एत ऐ"ले एकारका स्थानमा ऐकार 'एध+ऐ' भयो, आट् आगम 'एध+आ+ऐ', 'आटश्च'ले बृद्धि भयो,'एध+ऐ' पुनः "वृद्धिरेचि"ले वृद्धि भयो, 'एधै' सिद्ध भयो ।

---

एधावहै एधामहै ॥ आटश्च । ऐधत । ऐधेताम् । ऐधन्त । ऐधथाः । ऐधेथाम् । ऐधध्वम् । ऐधे । ऐधावहि । ऐधामहि ॥

**५१९. लिङः सीयुट् ३।४।१०२॥**

सलोपः । एधेत । एधेयाताम् ॥

**५२०. झस्य रन् ३।४।१०५॥**

लिङो झस्य रन् स्यात् । एधेरन् । एधेथाः । एधेयाथाम् । एधेध्वम् ॥

**५२१. इटोऽत् ३।४।१०६॥**

लिङादेशस्य इटोऽत्स्यात् ।

---

**एधावहै**– पूर्ववत् 'एधावहे' भएपछि हेका एकारका स्थानमा "एत ऐ"ले ऐकार भयो, आट् आगम, 'एध+आवहै' दीर्घ भयो, 'एधावहै' सिद्ध भयो ।

**एधामहै**–यस्तै प्रकारले 'एधामहे' भएपछि ऐकार, आट् आगम, दीर्घ, भएर 'एधामहै' सिद्ध हुन्छ ।

**ऐधत**– एध् लङ्, आट्, वृद्धि, त, शप्, 'ऐध्+अत' (ङित् लकार हुनाले "टित आत्मनेपदानां" लागेन) 'ऐधत' सिद्ध भयो ।

**ऐधेताम्**– एध् लङ्, आट्, वृद्धि, आताम्, शप्, आताम्का आकारका स्थानमा इय्, यलोप, गुण, 'ऐधेताम्' सिद्ध भयो ।

**ऐधन्त**– एध् लङ्, आट्, वृद्धि, झ, अन्त आदेश, शप्, 'ऐधन्त' सिद्ध भयो ।

**ऐधथाः**– एध् लङ्, आट्, वृद्धि, थास्, शप्, रुत्व, विसर्ग, 'ऐधथाः' सिद्ध भयो ।

**ऐधेथाम्**– 'ऐधेताम्'मा जस्तै प्रक्रिया भएर 'ऐधेथाम्' सिद्ध भयो ।

**ऐधध्वम्**– एध् लङ्, आट्, वृद्धि, ध्वम्, शप् भयो, 'ऐधध्वम्' सिद्ध भयो ।

**ऐधे**– पूर्ववत् 'ऐध+इ' भएपछि गुण भयो, 'ऐधे' सिद्ध भयो ।

**ऐधावहि,ऐधामहि**– एध् लङ्, आट्, वृद्धि, वहि, शप्, 'ऐध+वहि' "अतो दीर्घो यञि"ले दीर्घ 'ऐधावहि' सिद्ध भयो । यस्तै प्रक्रियाबाट 'ऐधामहि' सिद्ध हुन्छ ।

**लिङ इति**– लिङ्का स्थानमा आदेश भएका आत्मनेपदको सीयुट् आगम होस् ।

**सलोप इति**– "लिङः सलोपोऽनन्त्यस्य"ले सकारको लोप हुन्छ ।

**एधेत**– एध् धातुदेखि विध्यादि अर्थमा लिङ्, त, 'एध्+त' भएपछि 'लिङः सीयुट्'ले सीयुट् आगम, उट्को इत्संज्ञा, लोप, 'एध्+सीय्+त', शप्, 'एध+सीय+त' "लिङ सलोपो०"ले सकारको लोप, 'एध+ईय्+त' गुण 'एधेय्+त', "लोपो व्योर्वलि"ले यकारलोप, 'एधेत' सिद्ध भयो ।

**एधेयाताम्**– एध् विधिलिङ्, आताम्, सीयुट्, शप्, 'एध+सीय्+आताम्', सलोप 'एध+ईय्' आताम्, गुण 'एधेयाताम्' सिद्ध भयो ।

**एधेरन्**– एध् विधिलिङ्, 'एध्+ल्' लकारका स्थानमा झ, 'एध्+झ' झकारका स्थानमा "झस्य रन्"ले रन् आदेश, सीयुट्, शप्, सलोप, गुण, भएपछि 'एधेय्+रन्' यहाँ "लोपो व्योर्वलि"ले यकारको लोप भयो, 'एधेरन्' सिद्ध भयो ।

**एधेथाः**– 'एध्+थास्', 'एध्+सीय्+थास्', शप्, सलोप, गुण, यलोप भयो, 'एधेथाः' सिद्ध भयो ।

**एधेयाथाम्**– एधेयाताम्मा जस्तै प्रक्रिया भएर 'एधेयाथाम्' हुन्छ ।

**एधेध्वम्**–पूर्ववत् 'एध्+सीय्+ध्वम्', शप् सलोप, गुण, यलोप भयो, 'एधेध्वम्' सिद्ध भयो ।

**इटोऽदिति**– लिङ्का स्थानमा आदेश भएका उत्तम पुरुषको एकवचन इट् आगमका स्थानमा ह्रस्व अकार आदेश होस् ।

---

**एधय । एधेवहि । एधेमहि ॥**

**५२२. सुट् तिथोः ३।४।१०७॥**

लिङस्तथोः सुट् । यलोपः । आर्धधातुकत्वात्सलोपो न । एधिषीष्ट । एधिषीयास्ताम् । एधिषीरन् । एधिषीष्ठाः । एधिषीयास्थाम् । एधिषीध्वम् । एधिषीय । एधिषीवहि । एधिषीमहि । ऐधिष्ट । ऐधिषाताम् ॥

---

**एधेय**– एध् लिङ्, लकारका स्थानमा इट्, पूर्ववत् 'एधेय्+इ' भएपछि "इटोऽत्"ले इट्का इकार स्थानमा अकार भयो, 'एधेय' सिद्ध भयो ।

**एधेवहि,एधेमहि**– यहाँ पूर्ववत् 'एधेय्+वहि', 'एधेय्+महि' भएपछि यलोप हुन्छ र 'एधेवहि', 'एधेमहि' सिद्ध हुन्छन् ।

आशीर्लिङ्मा "लिङः सलोपो०"ले सीयुट् का सकारको लोप हुँदैन ।

त, आताम्, थास्, आथाम्मा "सुट्तिथोः"ले सुट् आगम हुन्छ ।

**सुडिति**– लिङ् लकारसम्बन्धी तकार र थकारको सुट् आगम होस् । यो सूत्रले विधिलिङ्मा पनि सुट् आगम पाउँछ तर त्यहाँ "लिङः सलोपो०"ले लोप भैहाल्छ र निष्फल हुन्छ, अतः "अकृतव्यूहाः पाणिनीयाः" यो नियमानुसार सुट् गरिदैन ।

**एधिषीष्ट**– एध् धातुदेखि आशीर्वाद अर्थमा लिङ् भयो 'एध्+ल्' भयो, लकारका स्थानमा त भयो, 'एध्+त' भयो, तलाई आर्धधातुक संज्ञा, तको सीयुट्, सीय्को, इट् आगम 'एधि+सीय्+त' यलोप "सुट्तिथोः"ले सुट् आगम 'एधि+सीस्+त' यहाँ "आदेशप्रत्यययोः"ले इण् प्रत्याहार देखि पर हुनाले दुवै सकारका स्थानमा षकार 'एधिषीष्त', तकारको "ष्टुना ष्टुः"ले ष्टुत्व भयो, 'एधीषीष्ट' सिद्ध भयो ।

**एधिषीयास्ताम्**– 'एध्+आताम्', सीयुट्, इट् आगम, तकारको सुट् आगम, आकार पर हुनाले सीय्को यलोप भएन, सीका सकारका स्थानमा षकार भयो, 'एधिषीयास्ताम्' सिद्ध भयो ।

**एधिषीरन्**– एध् लिङ्, झ, रन्, सीयुट्, इट्, यलोप, षत्व, 'एधिषीरन्' सिद्ध भयो ।

**एधिषीष्ठाः**– एध् लिङ्, थास्, सीयुट्, इट् आगम, थको सुट् आगम, 'एधिसीस्थास्' यहाँ सीका सकारका स्थानमा र स्थाका सकारका स्थानमा "आदेशप्रत्यययोः"ले षकार, थकारको ष्टुत्व भएर ठकार भयो, 'एधिषीष्ठास्' पदान्त सकारको रुत्व, विसर्ग भयो, 'एधिषीष्ठाः' सिद्ध भयो ।

**एधिषीयास्थाम्**– यहाँ 'एधिषीयास्ताम्'मा जस्तै साधनप्रक्रिया हुन्छ ।

**एधिषीध्वम्**– एध् लिङ्, ध्वम्, सीयुट्, इट्, षत्व, 'एधिषीध्वम्' सिद्ध भयो । एधि-षीध्वम् यहाँ एधि अङ्ग हुँदैन । इषीध्वम् यो सबै ध्वम् प्रत्ययमा आगम भएर बनेको हो, अतः इषीध्वम् पर राखेर एध्लाई अङ्गसंज्ञा हुन्छ । इणन्त अङ्गदेखि पर नहुनाले "इणः षीध्वंलुङ्लिटां०"ले ढत्व हुँदैन ।

**एधिषीय**– 'एध्+इसीय्+इ' यहाँ इकारका स्थानमा "इटोऽत्"ले अकार भयो, षत्व भयो, 'एधिषीय' सिद्ध भयो ।

**एधिषीवहि**– एध् लिङ्, वहि, सीयुट्, सीयुट्को इट् आगम, 'एध्+इसीय्+वहि' यकारको लोप, षत्व, 'एधिषीवहि' सिद्ध भयो ।

**एधिषीमहि**– यहाँ पनि वहिमा जस्तै प्रक्रिया हुन्छ ।

**ऐधिष्ट**– एध् लुङ्, आट्, वृद्धि, त, च्लि, च्लिका स्थानमा सिच्, सिच्को इट्, षत्व भयो, 'ऐधिष्ट' सिद्ध भयो ।

**ऐधिषाताम्**– एध् लुङ्, आट्, वृद्धि, आताम्, च्लि, सिच्, सिच्को इट्, षत्व भयो, 'ऐधिषाताम्' सिद्ध भयो ।

---

**५२३. आत्मनेपदेष्वनतः ७।१।५॥**

अनकारात्परस्यात्मनेपदेषु झस्य अदित्यादेशः स्यात् । ऐधिषत । ऐधिष्ठाः । ऐधिषाथाम् । ऐधिढ्वम् । ऐधिषि । ऐधिष्वहि । ऐधिष्महि । ऐधिष्यत । ऐधिष्येताम् । ऐधिष्यन्त । ऐधिष्यथाः । ऐधिष्येथाम् । ऐधिष्यध्वम् । ऐधिष्ये । ऐधिष्यावहि । ऐधिष्यामहि ॥ **कमु** कान्तौ ॥२॥

**५२४. कमेर्णिङ् ३।१।३०**

स्वार्थे । ङित्त्वात्तङ् । कामयते ।

---

**आत्मनेपदेष्विति–** ह्रस्व अकारभिन्न वर्णदेखि पर रहेका आत्मनेपदसम्बन्धी झकारका स्थानमा अत् आदेश होस् ।

**ऐधिषत–** एध् लुङ्, आट्, वृद्धि, झका स्थानमा "आत्मनेपदेष्वनतः"ले अत्, 'ऐध्+अत', च्लि, सिच्, 'एधिस्+अत', षत्व भयो, 'ऐधिषत' सिद्ध भयो ।

**ऐधिष्ठाः–** एध् लुङ्, आट्, वृद्धि, थास्, च्लि, सिच्, इट्, 'ऐध्+इस्+थास्'-'ऐधिस्थास्', षत्व, ष्टुत्व, रुत्व, विसर्ग भयो, 'ऐधिष्ठाः' सिद्ध भयो ।

**ऐधिषाथाम्–** 'एधिषाताम्'मा जस्तै यहाँ पनि प्रक्रिया हुन्छ ।

**ऐधिढ्वम्–** एध् लुङ्, आट्, वृद्धि, ध्वम्, च्लि, सिच्, इट्, 'एधिस्+ध्वम्', "धि च"ले सलोप 'एधि+ध्वम्' यहाँ "इणःषीध्वम्०"ले ध्वम्का धकारको ढत्व भयो, 'ऐधिढ्वम्' सिद्ध भयो ।

यहाँ च्लि प्रत्यय एध् धातुदेखि गरिन्छ । सिच् त्यसका स्थानमा हुने आदेश हो, इट् आगम सिच्को हो । अतः सिच् प्रत्ययसमेतलाई लिएर आदि तर्फको शब्दस्वरूप ऐधि छ र ध्वम्लाई पर राखेर ऐधिलाई अङ्ग संज्ञा हुन्छ र "इणःषीध्वम्०"ले लुङ्सम्बन्धी ध्वम्का धकारका स्थानमा ढकार हुन्छ ।

**ऐधिषि, ऐधिष्वहि, ऐधिष्महि–** यहाँ विशेष कार्य छैन पूर्ववत् यी रूपहरु सिद्ध हुन्छन् ।

**ऐधिष्यत–** एध् लृङ्, आट् आगम, वृद्धि, त, स्य, इट् आगम, षत्व भयो, 'ऐधिष्यत' सिद्ध भयो । लृङ्लकारमा साधनप्रक्रिया लृट्मा जस्तै हो यहाँ आट् आगम हुने प्रक्रिया विशेष छ । "टित आत्मने०"ले एत्व हुँदैन । समग्ररूप मूलमा उल्लिखित छन् साधनप्रक्रियाको ऊह गर्नू ।

**कमु–** धातु इच्छा गर्नू अर्थमा छ उकारको इत्संज्ञा हुन्छ । (सेट् सकर्मक )

**कमेरिति–** कम् धातुदेखि णिङ् प्रत्यय होस् स्वार्थमा ।

**ङित्त्वात् इति–** णिङ् प्रत्यय ङित् हुनाले तङ् (आत्मनेपद) हुन्छ ।

**कामि धातु–** कमुका उकारको इत्संज्ञा लोप भयो कम् भयो । कम् धातुदेखि "कमेर्णिङ्"ले स्वार्थमा णिङ् प्रत्यय भयो, इङ्को इत्संज्ञा र लोप, भएपछि, 'कम्+इ' भयो, "अत उपधायाः"ले वृद्धि भयो 'कामि' भयो, कामि यसलाई "सनाद्यन्ता धातवः"ले धातु संज्ञा भयो, कामि धातु बन्यो ।

**कामयते–** कामि धातुदेखि लट्लकार भयो, लकारका स्थानमा "अनुदात्तङितः०"ले आत्मनेपद प्रथमपुरुष एकवचन त भयो, शप् प्रत्यय भयो, 'कामि+अ+त' भयो, गुण अय् आदेश एत्व भयो, 'कामयते' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि बन्दछन् ।

**लट्लकारका रूप–**

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | कामयते | कामयेते | कामयन्ते |
| मध्यमपुरुष | कामयसे | कामयेथे | कामयध्वे |
| उत्तमपुरुष | कामये | कामयावहे | कामयामहे |

**५२५. अयामन्ताल्वाय्येत्न्विष्णुषु ६।४।५५॥**

आम् अन्त आलु आय्य इत्नु इष्णु एषु णेरयादेशः स्यात्। कामयाञ्चक्रे। आयादय इति णिङ् वा। चकमे। चकमाते। चकमिरे। चकमिषे। चकमाथे। चकमिध्वे। चकमे। चकमिवहे। चकमिमहे। कामयिता।

---

**अयामिति**–आम्,अन्त,आलु,आय्य,इत्नु,इष्णु, यी प्रत्यय पर भएमा णिका स्थानमा अय् आदेश होस्।

**कामयाञ्चक्रे**– लिट्को विवक्षामा, "कमेर्णिङ्"लाई बाधेर "आयादय आर्धधातुके वा"ले वैकल्पिक णिङ् भयो, वृद्धि भयो, कामि धातु बन्यो। कामि धातुदेखि लिट् लकार आयो, "कास्यनेकाच०"ले आम् भयो, 'कामि+आम्+ल्' भयो, कामिका इकारको "णेरनिटि"ले लोप पायो, त्यसलाई बाधेर "अयामन्ताल्वाय्ये०"ले अय् आदेश भयो, 'कामयाम्+ल्' भयो, "आमः"ले लिट्को लुक् भयो, 'कामयाम्' भयो, "कृञ्चानुप्रयुज्यते०"ले लिट् लकार पर हुने कृधातुको अनुप्रयोग भयो, 'कामयाम्+कृ+ल्' भयो, "आम्प्रत्ययवत्०"ले आम्को प्रकृति कामि धातु आत्मनेपदी हुनाले कृ धातुदेखि पनि आत्मनेपद भयो, प्रथमपुरुष एकवचन त आयो, 'त'का स्थानमा "लिटस्तझयोः०"ले एश् आदेश भयो, 'कामयाम्+कृ+ए' भयो, पूर्ववत् (एधाम् कृ+ए मा जस्तै) द्वित्व, अभ्यासकार्य यण् आदि भयो, 'कामयाम्+चक्रे' भयो, मकारको अनुस्वार परसवर्ण भयो, 'कामयाञ्चक्रे' सिद्ध भयो। यस्तै प्रकारले अरू रूप पनि सिद्ध हुन्छन्।

**णिङ्प्रत्यय भएमा कम् धातुका लिट्लकारका रूप–**

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | कामयाञ्चक्रे | कामयाञ्चक्राते | कामयाञ्चक्रिरे। |
| मध्यमपुरुष | कामयाञ्चकृषे | कामयाञ्चक्राथे | कामयाञ्चकृढ्वे |
| उत्तमपुरुष | कामयाञ्चक्रे | कामयाचकृवहे | कामयाञ्चकृमहे। |

**आयादय इति**– यहाँ "आयादय आर्धधातुके वा"ले आर्धधातुकविवक्षामा णिङ्प्रत्यय विकल्पले हुन्छ। णिङ् प्रत्यय नभएको पक्षमा कम् धातु नै छ र कम् धातुदेखि लिट् हुन्छ।

**चकमे**– कम् धातुदेखि लिट्, त, एश्, 'कम्+ए' द्वित्व, 'कम्+कम्+ए' हलादिशेष, 'ककम्+ए', चुत्व भयो, 'चकमे' सिद्ध भयो। यस्तै प्रकारले अरू रूप पनि हुन्छन्।

**णिङ्प्रत्यय नभएमा कम् धातुका लिट् लकारका रूप–**

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | चकमे | चकमाते | चकमिरे |
| मध्यमपुरुष | चकमिषे | चकमाथे | चकमिध्वे |
| उत्तमपुरुष | चकमे | चकमिवहे | चकमिमहे |

**लुट्मा** पनि आर्धधातुक तासि प्रत्ययको विवक्षा हुनाले णिङ् प्रत्यय विकल्पले हुन्छ। णिङ् प्रत्यय भएको पक्षमा पूर्ववत् कामिधातु बन्दछ।

**कामयिता**–कामि धातुदेखि लुट् लकार भयो, 'कामि+ल्' भयो, लकारका स्थानमा त, तासि, इट्, 'कामि+इतास्+त' कामिका इकारका स्थानमा गुण अय् आदेश 'कामयितास्+त', तका स्थानमा डा 'कामयितास्+आ', टिलोप, 'कामयिता' सिद्ध भयो। यस्तै प्रकारले अरू रूप पनि हुन्छन्।

कामयितासे । कमिता । कामयिष्यते, कमिष्यते । कामयताम् । अकामयत । कामयेत । कामयिषीष्ट ॥

**५२६. विभाषेटः ८।३।७९॥**

इणः परो य इट् ततः परेषां षीध्वंलुङ्लिटां धस्य वा ढः । कामयिषीढ्वम्, कामयिषीध्वम् ।

---

**कामयितासे**– यो लुट् लकार मध्यमपुरुष एकवचन थास्को रूप आत्मनेपदको भिन्नता देखाउन लेखिएको हो ।

**णिङ् प्रत्यय भएमा कम् धातुका लुट् लकारका रूप-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | कामयिता | कामयितारौ | कामयितारः |
| मध्यमपुरुष | कामयितासे | कामयितासाथे | कामयिताध्वे |
| उत्तमपुरुष | कामयिताहे | कामयितास्वहे | कामयितास्महे |

**कमिता**– णिङ् नभएको पक्षमा कम् धातुदेखि लुट्, त, तासि, इट्, कामयितास्+त, "लुटः प्रथमस्य"ले तका स्थानमा डा 'कमितास्+आ' टिलोप, 'कमिता' सिद्ध भयो ।

**णिङ् प्रत्यय नभएमा कम् धातुका लुट् लकारका रूप-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | कमिता | कमितारौ | कमितारः |
| मध्यमपुरुष | कमितासे | कमितासाथे | कमिताध्वे |
| उत्तमपुरुष | कमिताहे | कमितास्वहे | कमितास्यहे |

लृट्मा पनि 'स्य' आर्धधातुक प्रत्ययको विवक्षा हुनाले णिङ् विकल्पले हुन्छ । यस्तै प्रकारले कामयिष्यते, कमिष्यते आदि दुई थरी रूप हुन्छन् ।

लोट् लकारमा णिङ् प्रत्यय विकल्पले नहुने हुदाँ एकथरीमात्र रूप हुन्छन् ।

**कामयताम्**– कामि धातुदेखि लोट्, त, 'कामि+त',शप्, गुण, अय्आदेश, एत्व, 'कामयते', भएपछि "आमेतः"ले एकारका स्थानमा आम् भयो, 'कामयताम्' सिद्ध भयो । यस्तैप्रकारले कामयेताम्,कामयन्ताम् आदि सबै रूप एधधातुमा जस्तै हुन्छन् ।

लङ्मा पनि अकामयत, अकामयेताम्, आदि रूप एध् धातुमा जस्तै हुन्छन् ।

विधिलिङ्मा कामयेत, कामयेयाताम्, कामयेरन्, आदि रूप पूर्ववत् हुन्छन् ।

आशीर्लिङ्मा आर्धधातुक हुनाले णिङ् प्रत्यय भएको पक्षमा र नभएको पक्षमा गरी दुई थरी रूप हुन्छन् ।

**कामयिषीष्ट**- 'कामि+त', 'कामि+इसीय्+त', 'कामि+इसीय्स्+त', 'कामयिसीय्+स्+त', 'कामयिषीष्त', 'कामयिषीष्ट' सिद्ध हुन्छ । कामयिषीयास्ताम्, कामयिषीरन्, आदि रूप पूर्ववत् हुन्छन् । ध्वम्मा ढत्व गर्ने कार्य अधिक छ ।

**विभाषेति**– इण्देखि पररहेको जो इट् त्यसदेखि पर रहेका षीध्वम्सम्बन्धी, लुङ्सम्बन्धी र लिट्सम्बन्धी धकारका स्थानमा ढकार होस् । (यहाँ पनि इणन्त अङ्ग नै लिइन्छ तर त्यसदेखि पर इट्, षीध्वम्, लुङ् र लिट् हुनुपर्छ भन्ने आशय हो ।)

**कामयिषीढ्वम् / कामयिषीध्वम्**– 'कामि+इषीय्+ध्वम' यहाँ, यलोप, गुण, अय् आदेश, 'कामयिषीध्वम्' भएपछि यहाँ "विभाषेटः"ले इण्- कामय्को यकारदेखि पर रहेको इट् आगम देखि पर षीध्वम्सम्बन्धी धकार छ र वैकल्पिक ढकार भयो, 'कामयिषीढ्वम्' नभएको पक्षमा 'कामयिषीध्वम्', यी दुई रूप सिद्ध भए ।

कमिषीष्ट । कमिषीध्वम् ॥

**५२७. णिश्रिद्रुस्रुभ्यः कर्तरि चङ् ३।१।४८॥**

ण्यन्तात् श्रयादिभ्यश्च च्लेश्चङ् स्यात् कर्त्रर्थे लुङि परे । अकामि अ त इति स्थिते–

**५२८. णेरनिटि ६।४।५१॥**

अनिडादावार्धधातुके परे णेर्लोपः स्यात् ।

**५२९. णौ चङ्युपधाया ह्रस्वः ७।४।१॥**

चङ्परे णौ यदङ्गं तस्योपधाया ह्रस्वः स्यात् ॥

**५३०. चङि ६।१।११॥**

चङि परे अनभ्यासस्य धात्ववयवस्यैकाचः प्रथमस्य द्वे स्तोऽजादेर्द्वितीयस्य ॥

**५३१. सन्वल्लघुनि चङ्परेऽनग्लोपे ७।४।९३॥**

चङ्परे णौ यदङ्गं तस्य योऽभ्यासो लघुपरस्तस्य सनीव कार्यं स्याण्णावग्लोपेऽसति ॥

**५३२. सन्यतः ७।४।७९॥**

अभ्यासस्यात इत् स्यात् सनि ॥

**५३३. दीर्घो लघोः ७।४।९४॥**

लघोरभ्यासस्य दीर्घः स्यात् सन्वद्भावविषये । अचीकमत ।

---

उत्तमपुरुषमा कामयिषीय, कामयिषीवहि, कामयिषीमहि, यी रूप पनि एध् धातुमा जस्तै प्रक्रियाद्वारा सिद्ध हुन्छन् । णिङ् नभएको पक्षमा-

**कमिषीष्ट**– कम् आशीर्लिङ्, त, 'कम्+त', 'कम्+सीय्त', 'कम्+इसीय्+त', 'कम्+इसीय्+स्त', यलोप, 'कमिसीस्त', षत्व, ष्टुत्व, 'कमिषीष्ट' सिद्ध भयो । यस्तै प्रकारले कमिषिष्टाम् आदि रूप हुन्छन् ।

**कमिषीध्वम्**– ध्वम्मा 'कमिषीध्वम्' यहाँ कम् इणन्त अङ्ग छैन र "इणः षीध्वम्०" र "विभाषेटः" दुवै लाग्दैनन्, ढत्व हुँदैन ।

लुङ् लकार आर्धधातुक हुनाले आय प्रत्यय भएको पक्षमा र नभएको पक्षमा गरी दुई थरी रूप हुन्छन् ।

**णिश्रीति**– ण्यन्त धातु, श्रि धातु, द्रु धातु, स्रु धातुदेखि पर रहेका च्लिका स्थानमा चङ् होस्, कर्ता अर्थमा विधान गरिएको लुङ् पर भएमा । अकाम् इ अ त यस्तो स्थितिमा ।

**णेरिति**– इट् आदिमा नहुने आर्धधातुक प्रत्यय पर भएमा णिको लोप होस् ।

**णौचङीति**– चङ् पर हुने णि पर भएमा जो अङ्ग छ त्यसका उपधाका स्थानमा ह्रस्व होस् ।

**चङीति**– चङ् पर भएमा अभ्यासभिन्न धातुको अवयव प्रथम एकाच्को द्वित्व होस् अजादिमा हुनेछ भने दोस्रो अच्को द्वित्व होस् ।

**सन्वदिति**– चङ् पर हुने णि पर भएमा जो अङ्ग छ त्यसको लघु पर भएको जो अभ्यास त्यसको, सन् पर भएमा जस्तै कार्य होस्, णिलाई निमित्त मानेर अक्को लोप भएको छैन भने ।

**सन्यत इति**– अभ्यासमा रहेको ह्रस्व अकारका स्थानमा इकार आदेश होस् सन् पर भएमा ।

**दीर्घ इति**– लघुसंज्ञक अभ्यासका स्थानमा दीर्घ आदेश होस् सन्वद्भावको विषयमा ।

**अचीकमत**– कम् धातुदेखि लुङ् आर्धधातुक हुनाले लुङ्को विवक्षामा "आयादय०"ले णिङ् विकल्पले भयो, वृद्धि भयो, कामि धातु भयो, कामि धातुदेखि लुङ्लकार, अट् आगम, त, 'अकामि+त'

णिङभावपक्षे– **वा**. (कमेश्च्लेश्चङ् वाच्यः) । अचकमत । अकामयिष्यत, अकमिष्यत ॥
**अय** गतौ ॥३॥ अयते ॥

**५३४. उपसर्गस्यायतौ ८।२।१९॥**

अयतिपरस्योपसर्गस्य योरेफस्तस्य लत्वं स्यात् । प्लायते । पलायते ॥

---

भयो, च्लि प्रत्यय भएपछि "च्लेःसिच्" लाई बाँधेर "णिश्रिद्रुस्रुभ्य०"ले चङ् भयो, 'अकाम्+इ+अ+त' भयो, "णेरनिटि"ले णिलोप भयो, 'अकाम्+अ+त' णिलोप स्थानिवद्भाव भएर "णौ चङ्युपधाया"ले उपधाको ह्रस्व भयो, 'अकम्+अ+त', यहाँ "चङि"ले कम्को द्वित्व भयो, 'अकम्+कम्+अ+त' अभ्यासकार्य, 'अचकम्+अत' यहाँ "सन्वल्लघुनि०"ले चङ् पर हुने णि पर भएको अङ्ग छ, 'अचकम्' त्यसको लघुपर भएको अभ्यास छ, 'च' त्यसको सन्मा जस्तै कार्य होस् भनेकोले सन्मा हुने कार्य के त ? "सन्यतः"ले सन् पर भएमा अभ्यासका अकारका स्थानमा इकार हुन्छ । यहाँ पनि सन्वद्भाव भएर सन् पर भए जस्तै भएको हुनाले अभ्यासको अच्को अकारका स्थानमा उक्त सूत्रले इकार भयो, 'अचि+कम्+अ+त' भयो, अब लघुसंज्ञक अभ्यास चिका स्थानमा सन्वद्भावको विषय हुनाले "दीर्घो लघोः"ले दीर्घ हुँदा 'अचीकम्+अत'- 'अचीकमत' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध हुन्छन् । सबै रूप तल दिइन्छ –

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अचीकमत | अचीकमेताम् | अचीकमन्त |
| मध्यमपुरुष | अचीकमथाः | अचीकमेथाम् | अचीकमध्वम् |
| उत्तमपुरुष | अचीकमे | अचीकमावहि | अचीकमामहि |

**णिङभावेति**- णिङ् नभएको पक्षमा–

(वा.) **कमेरिति**– कम् धातुदेखि पर रहेको च्लिका स्थानमा चङ् होस् भन्नु ।

**अचकमत**– कम् धातुदेखि णिङ् प्रत्यय नभएको पक्षमा लुङ् लकार भयो' कम्+ल्', अट् आगम, त, च्लि प्रत्यय, "कमेश्लेश्चङ् वाच्यः" यो वार्तिकले च्लिका स्थानमा चङ् भयो, "चङि"ले द्वित्व र अभ्यासकार्य भयो, 'अचकम्+अ+त' यहाँ णि पर छैन र सन्वद्भाव भएन, अतः अभ्यासको इत्व, दीर्घ भएन, 'अचकमत' सिद्ध भयो । यस्तै प्रकारले 'अचकमेताम्' आदि रूप हुन्छन् ।

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अचकमत | अचकमेताम् | अचकमन्त |
| मध्यमपुरुष | अचकमथाः | अचकमेथाम् | अचकमध्वम् |
| उत्तमपुरुष | अचकमे | अचकमावहि | अचकमामहि |

**लृङ्मा**– णिङ् भएको पक्षमा 'अकामयिष्यत', नभएको पक्षमा 'अकमिष्यत' आदि रूप हुन्छन् ।

**अय**- धातु जानु अर्थमा छ । यका अकारको "उपदेशेऽजनुनासिक"ले इत्संज्ञा र "तस्य लोपः"ले लोप हुन्छ र अय् धातु बन्दछ । (सेट् सकर्मक)

**अयते**– अय् धातुदेखि लट्, त, शप् भयो, 'अयते' सिद्ध भयो । यस्तै प्रकारले अयेते, अयन्ते, आदि रूप सिद्ध हुन्छन् ।

**उपसर्गेति**– अय् धातु पर भएमा उपसर्गका रेफका स्थानमा लकार होस् ।

**प्लायते, पलायते**- ( भाग्छ ) । प्र उपसर्ग पूर्वक अय् धातुदेखि लट्, त, शप्, आदि भयो, दीर्घ भयो, 'प्रायते' भयो, "उपसर्गस्यायतौ"ले रेफको लकार भयो, 'प्लायते' सिद्ध भयो । यस्तै प्रकारले 'पलायते' सिद्ध भयो ।

**५३५. दयायासश्च ३।१।३७।।**

दय् अय् आस् एभ्य आम् स्याल्लिटि । अयाञ्चक्रे । अयिता । अयिष्यते । अयताम् । आयत । अयेत । अयिषीष्ट । विभाषेटः । अयिषीढ्वम्, अयिषीध्वम् । आयिष्ट । आयिढ्वम्, आयिध्वम् । आयिष्यत ॥ **द्युत** दीप्तौ ॥४॥ द्योतते ।

---

**दयायेति**– दय्, अय् र आस् धातुदेखि आम् प्रत्यय होस् लिट् लकार पर भएमा ।

**अयाञ्चक्रे**– अय् धातुदेखि लिट् लकार आयो "दयायासश्च"ले आम् प्रत्यय भयो, 'अयाम्+ल्' लिट्को लुक् भयो, "कृञ्चानुप्रयुज्यते०"ले लिट् लकार पर हुने कृ धातुको अनुप्रयोग भयो, 'अयाम्+कृ+ल', भयो, "आम्प्रत्ययवत्कृञो०"ले आत्मनेपद भयो, 'अयाम्+कृ+त', एश्, 'अयाम्+कृ+ए', द्वित्व, अभ्यासकार्य, यण्, 'अयाम्+चक्रे' मकारका स्थानमा अनुस्वार परसवर्ण, 'अयाञ्चक्रे' सिद्ध भयो । यस्तै अरू रूप पनि पूर्ववत् सिद्ध हुन्छन् ।

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | अयाञ्चक्रे | अयाञ्चक्राते | अयाञ्चक्रिरे |
| मध्यमपुरुष | अयाञ्चकृषे | अयाञ्चक्राथे | अयाञ्चकृढ्वे |
| उत्तमपुरुष | अयाञ्चक्रे | अयाञ्चकृवहे | अयाञ्चकृमहे |

**लुट्मा**– अयिता, अयितारौ इत्यादि रूप, कमिता, कमितारौ इत्यादिमा हुने प्रक्रिया जस्तै प्रक्रियाभएर सिद्ध हुन्छन् । **लृट्मा** पनि अयिष्यते आदि रूप कम् धातुमा जस्तै प्रक्रियाद्वारा सिद्ध हुन्छन् ।

**लोट्मा**– एध् धातुमा जस्तै प्रक्रिया भएर अयताम्, अयेताम् आदि रूप सिद्ध हुन्छन् । विध्यादि र आशीर्वाद अर्थमा समान रूप नै हुन्छन् ।

**आयत**– अय् धातुदेखि लङ्लकार आयो, 'अय्+ल', आट्, वृद्धि, 'आय्+ल', त, शप् भयो, 'आयत' सिद्ध भयो । अरू रूप पनि यस्तै प्रकारले सिद्ध हुन्छन् ।

**अयेत**– अय् धातुदेखि विध्यादि अर्थमा लिङ्, त, सीयुट्, सलोप, गुण, यकारको लोप भयो, 'अयेत' सिद्ध भयो ।

**आशीर्लिङ्**– आशीर्वाद अर्थमा अय् धातुदेखि लिङ्, त, 'अय्+त', सीयुट् आगम, 'अय्+सीय्+त', इट् आगम, 'अय्+इसीय्+त', तकारको सुट्, यलोप, षत्व, ष्टुत्व भयो, 'अयिषीष्ट' सिद्ध भयो । यस्तै प्रकारले अयिषीयास्ताम्, अयिषीरन् आदि रूप हुन्छन् ।

**अयिषीढ्वम्/अयिषीध्वम्**– अय् धातुदेखि आशीर्लिङ्, 'अय्+ध्वम्', सीयुट् आगम, इट्, षत्व, 'अयिषीध्वम्' यहाँ "विभाषेटः"ले ध्वम्का धकारको वैकल्पिक ढत्व भयो, 'अयिषीढ्वम्' सिद्ध भयो । ढत्व नभएको पक्षमा 'अयिषीध्वम्' भयो । यसरी दुई रूप सिद्ध भए ।

**आयिष्ट**– अय धातुदेखि लुङ्, आट्, वृद्धि, 'आय्+त', च्लि, सिच्, इट्, 'आय्+इस्+त', षत्व, ष्टुत्व भयो, 'आयिष्ट' सिद्ध भयो । यस्तै प्रकारले आयिषाताम्, आयिषत, आयिष्ठाः, आयिषाथाम्, यी रूप हुन्छन् ।

**आयिढ्वम्/आयिध्वम्**– 'आयिस्+ध्वम्' भएपछि "धि च"ले सलोप भयो, 'आयि+ध्वम्' यहाँ "विभाषेटः"ले वैकल्पिक ढत्व भयो, 'आयिढ्वम्', ढत्व नभएका पक्षमा 'आयिध्वम्' यी दुई रूप सिद्ध भए । उत्तम पुरुषमा आयिषि, आयिष्वहि, आयिष्महि यी रूप हुन्छन् ।

**आयिष्यत**– लृङ् लकारमा आयिष्यत आदि रूप हुन्छन् ।

१. **द्युत** धातु प्रकाशित हुनु अर्थमा छ । अकारको इत्संज्ञा, लोप हुन्छ । (सेट् अकर्मक)

**द्योतते**– द्युत धातुदेखि लट् प्रथमपुरुष एकवचन त भयो, 'द्युत्+त' शप् "पुगन्तलघूपधस्य च"ले गुण भयो, 'द्योत्+अ+त', तका अकारको "टित आत्मनेपदानां टेरे"ले एत्व भयो, 'द्योतते' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध हुन्छन् ।

---

**५३६. द्युतिस्वाप्योः सम्प्रसारणम् ७।४।६७।।**

अनयोरभ्यासस्य सम्प्रसारणं स्यात् । दिद्युते ॥

**५३७. द्युद्भ्यो लुङि १।३।९१।।**

द्युतादिभ्यो लुङः परस्मैपदं वा स्यात् । पुषादीत्यङ् । अद्युतत्, अद्योतिष्ट ।

---

| द्युत् लट् | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | द्योतते | द्योतेते | द्योतन्ते |
| | मध्यमपुरुष | द्योतसे | द्योतेथे | द्योतध्वे |
| | उत्तमपुरुष | द्योते | द्योतावहे | द्योतावहे |

**द्युतिस्वाप्योरिति**– द्युत् धातु र स्वप् धातुका अभ्यासका स्थानमा संप्रसारण होस् ।

**दिद्युते**– द्युत् लिट्, 'द्युत्+ल्', 'द्युत्+त', एशआदेश, 'द्युत्+ए', द्वित्व, 'द्युत्+द्युत्+ए' भएपछि "द्युतिस्वाप्योः०"ले संप्रसारण हुँदा "इग्यणः संप्रसारणम्" लगाएर अभ्यास द्युत्का यकारका स्थानमा संप्रसारण-इकार भयो, दिउत् यहाँ "संप्रसारणाच्च"ले पूर्वरूप भयो, 'दित्+द्युत्+ए' भयो, हलादिशेष भयो, कित्वाद् गुणनिषेध भयो, वर्णमेलन भयो, 'दिद्युते' सिद्ध भयो । यसैगरी आताम् आदि विभक्तिमा पनि संप्रसारण पूर्वरूप हलादिशेष गुणनिषेध भएर रूप बन्दछन्–

| द्युत् लिट् | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुण | दिद्युते | दिद्युताते | दिद्युतिरे |
| | मध्यमपुरुष | दिद्युतिषे | दिद्युताथे | दिद्युतिध्वे |
| | उत्तमपुरुष | दिद्युते | दिद्युतिवहे | दिद्युतिमहे |

**लुट्मा** द्योतिता आदि, **लृट्मा** द्योतिष्यते आदि, **लोट्मा** द्योतताम् आदि, **लङ्मा** अद्योतत, आदि, **विधिलिङ्मा** द्योतेत आदि, आशीर्लिङ्मा द्योतिषीष्ट आदि रूप पूर्ववत् हुन्छन् ।

**द्युद्भ्य इति**– द्युतादि धातुदेखि पर रहेका लुङ्का स्थानमा परस्मैपद विकल्पले होस् ।

**पुषादीति**– "पुषादिद्युताद्यलृदितः परस्मैपदेषु"ले अङ् हुन्छ ।

**अद्युतत्**– द्युत् धातुदेखि लुङ्लकार, अट् आगम, 'अद्युत्+ल्' भयो, लकारका स्थानमा "अनुदात्तङित"लाई बाधेर "द्युद्भ्यो लुङि"ले वैकल्पिक परस्मैपद हुँदा प्रथमपुरुष एकवचन ति आयो, 'अद्युत्+ति', च्लि प्रत्यय भयो, च्लिका स्थानमा सिच् पायो, त्यसलाई बाधेर "पुषादिद्युताद्यलृदितः०"ले अङ् भयो, ङित्त्वाद् गुणनिषेध भयो, 'अद्युत्+अति' यहाँ तिका इकारको "इतश्च"ले लोप भयो, वर्णमेलन भयो, 'अद्युतत्' सिद्ध भयो । यस्तै प्रकारले परस्मैपद भएको पक्षमा अङ् हुन्छ र अद्युतताम्, अद्युतन् आदि रूप हुन्छन् । परस्मैपद नभएको पक्षमा–

**अद्योतिष्ट**– 'अद्युत्+ल्' यहाँ "अनुदात्तङितः०"ले आत्मनेपद प्रथमपुरुष एकवचन त आयो, च्लि प्रत्यय भयो, च्लिका स्थानमा सिच्, इट् आगम, 'अद्युत्+इस्+त', गुण, 'अद्योत्+इस्+त', वर्णमेलन, षत्व, ष्टुत्व, 'अद्योतिष्ट' सिद्ध भयो । यस्तै प्रकारले अद्योतिषाताम्, अद्योतिषत, आदिरूप हुन्छन् ।

| द्युत् लुङ् | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अद्योतिष्ट | अद्योतिषाताम् | अद्योतिषत |
| | मध्यमपुरुष | अद्योतिष्ठाः | अद्योतिषाथाम् | अद्योतिढ्वम् |
| | उत्तमपुरुष | अद्योतिषि | अद्योतिष्वहि | अद्योतिष्महि |

अद्योतिष्यत ॥ एवं **श्विता** वर्णे ॥५॥ **ञिमिदा** स्नेहने ॥६॥ **ञिष्विदा** स्नेहनमोचनयोः ॥७॥ मोहनयोरित्येके । **ञिक्ष्विदा** चेत्येके ॥ **रुच** दीप्तावभिप्रीतौ च ॥८॥ **घुट** परिवर्तने ॥९॥

---

लुङ्मा– अद्योतिष्यत आदि रूप हुन्छन् ।

**एकमिति**– द्युतादिगणमा जम्मा २४ धातु छन् । यहाँ लघुकौमुदीमा द्युत् धातुदेखि वृतु वर्तने सम्म १७ धातु द्युतादिगणमा दिइएको छ । वृध, शृध्, स्यन्द्, कृप्, रुट्, लुट्, लुठ्, यी धातु यहाँ दिएको छैन । वृत धातुको लुङ्मा अङ् भएको रूप पनि दिएको छैन । एवं भनेर यहाँ द्युतादि धातुलाई स्मरण गरेको छ । यस्तै प्रकारले तल लेखिएका धातुमा पनि लुङ्मा अङ् हुन्छ भन्ने आशय हो । वृत् धातुमा "वृद्भ्यःस्यसनोः", "न वृद्भ्यश्चतुर्भ्यः" यी दुई सूत्र लाग्ने हुनाले द्युतादि गणमा भए पनि वृत धातुमा केही विशेषता भएकोले द्युत धातु जस्तै भएन, तर पनि लुङ्मा त उस्तै छ । यी श्विताआदि धातुका अर्थ र दिग्दर्शनार्थ कतिपय धातुका लट् आदि लकारका प्रथमपुरुष एकवचनका रूप पनि दिइएको छ ।

२. **श्विता** धातु रङाउनु अर्थमा छ । आकारको इत्संज्ञा हुन्छ श्वित् रहन्छ । (सेट् सकर्मक) प्रत्येक लकारका आदिका एक-एक रूप तल दिइन्छ–

श्वेतत । शिश्विते । श्वेतिता । श्वेतिष्यते । श्वेतताम् । अश्वेतत । श्वेतेत । श्वेतिषीष्ट । अश्वितत्/अश्वेतिष्ट । अश्वेतिष्यत ।

३. **ञिमिदा** धातु चिल्लो बनाउने अर्थमा छ । ञिको र आकारको इत्संज्ञा हुन्छ । मिद् बाँकी रहन्छ । (सेट् सकर्मक) प्रत्येक लकारका एक-एक रूप तल दिइन्छ-

मेदते । मिमिदे । मेदिता । मेदिष्यते । मेदताम् । अमेदत । मेदेत । मेदिषीष्ट । अमिदत्/अमेदिष्ट । अमेदिष्यत ।

४. **ञिष्विदा** धातु चिल्लो हुनु र छोडनु अर्थमा छ । ञि र दाको आकारको इत्संज्ञा हुन्छ, ष्विद् बाँकी रहन्छ । षकारका स्थानमा "धात्वादेः षः सः"ले सकार हुन्छ र 'स्विद्' हुन्छ । (सेट् अर्थानुसार अकर्मक र सकर्मक) प्रत्येक लकारका एक-एक रूप तल दिइन्छ-

स्वेदते । सिष्विदे । स्वेदिता । स्वेदिष्यते । स्वेदताम् । अस्वेदत । स्वेदेत । स्वेदिषीष्ट । अस्विदत् / अस्वेदिष्ट । अस्वेदिष्यत ।

**स्नेहनमोहनयोरिति**– 'स्नेहनमोचनयोः' यसको ठाँउमा 'स्नेहनमोहनयोः' यस्तो कसैले भन्दछन् । मोहन भनेको मोहित हुनु हो ।

५. **ञिक्ष्विदेति**– कसैले 'ञिक्ष्विदा' यस्तो पाठ पढ्छन् । त्यो पाठमा क्ष्विद् धातु हुन्छ ।

६. **रुच**[८०] धातु प्रकाश हुनु र रुचिलाग्नु (मन पर्नु) अर्थमा छ । अकारको इत्संज्ञा र लोप हुन्छ । ( सेट् अर्थानुसार अकर्मक र सकर्मक) प्रत्येक लकारका एक-एक रूप तल दिइन्छ-

रोचते । रुरुचे । रोचिता । रोचिष्यते । रोचताम् । अरोचत । रोचेत । रोचिषीष्ट । अरुचत्/अरोचिष्ट । अरोचिष्यत ।

७. **घुट**धातु घोट्नु अर्थमा छ । घुटका अकारको इत्संज्ञा र लोप हुन्छ । (सेट् सकर्मक) प्रत्येक लकारका एक-एक रूप तल दिइन्छ-

---

८० यो रुच् धातु प्रकाश हुनु अर्थमा अकर्मक छ । रुचि लाग्नु अर्थमा पनि अकर्मक नै हुन्छ । जसले रुचि मान्दछ अर्थात् जसलाई रुचि लाग्छ तद्वाचक प्रातिपदिकदेखि चतुर्थी विभक्ति हुन्छ । जस्तै 'देवदत्ताय मोदको रोचते' (देवदत्तलाई लड्डू मनपर्छ ।)

**शुभ** दीप्तौ ॥ १०॥ **क्षुभ** संचलने ॥११॥ **णभ तुभ** हिंसायाम् ॥१२-१३॥ **स्रंसु भ्रंसु ध्वंसु** अवस्रंसने ॥१४-१५-१६॥ **ध्वंसु** गतौच ॥ **स्रम्भु** विश्वासे ॥१७॥ **वृतु** वर्तने ॥१८॥ वर्तते । ववृते । वर्तिता ॥

---

घोटते । जुघुटे । घोटिता । घोटिष्यते । घोटताम् । अघोटत । घोटेत । घोटिषीष्ट । अघुटत्/अघोटिष्ट । अघोटिष्यत ।

८. **शुभ** धातु शोभा पाउनु अर्थमा छ । शुभका अकारको इत्संज्ञा र लोप हुन्छ । (सेट् अकर्मक) प्रत्येक लकारका एक-एक रूप तल दिइन्छ-

शोभते । शुशुभे । शोभिता । शोभिष्यते । शोभताम् । अशोभत । शोभेत । शोभिषीष्ट । अशुभत्/अशोभिष्ट । अशोभिष्यत ।

९. **क्षुभ** धातु हडबडाउनु अर्थमा छ । क्षुभका अकारको इत्संज्ञा र लोप हुन्छ । (सेट् अकर्मक) प्रत्येक लकारका एक-एक रूप तल दिइन्छ-

क्षोभते । चुक्षुभे । क्षोभिता । क्षोभिष्यते । क्षोभताम् । अक्षोभत । क्षोभेत । क्षोभिषीष्ट । अक्षुभत्/अक्षोभिष्ट । अक्षोभिष्यत ।

१०. **णभ** धातु हिंसा अर्थमा छ । अकारको इत्संज्ञा र लोप हुन्छ । "णो नः"ले णभका णकारको नकार हुन्छ । (सेट् सकर्मक) लुङ्मा अनभत्/अनभिष्ट दुईथरी रूप हुन्छन् अरु आफै ऊह गर्नू ।

११. **तुभ** धातु हिंसा अर्थमा छ । तुभमा अकार इत्संज्ञा र लोप हुन्छ । (सेट् सकर्मक) लुङ्मा अतुभत्, अतोभिष्ट दुई थरी रूप हुन्छन् । अरु रूप आफै ऊह गर्नू ।

१२. **स्रंसु**, १३. **ध्वंसु**, १४. **भ्रंसु** धातु खस्नु (गिर्नु) अर्थमा छन् । उकारको इत्संज्ञा र लोप हुन्छ । स्रंस्, ध्वंस्, भ्रंस् धातु बाँकी रहन्छन् । (सेट् अकर्मक) लट् आदि लकारका रूपहरू आफै स्मरण गर्नू । लुङ्मा वैकल्पिक परस्मैपद र परस्मैपदमा च्लिका स्थानमा अङ् हुने हुनाले एकरूपको दिग्दर्शन गराइन्छ-

**अस्रसत्**– स्रंस् धातुदेखि लुङ् "द्युद्भ्यो लुङि"ले वैकल्पिक परस्मैपद ति, 'स्रंस्+ति', च्लि, अङ्, 'अस्रंस्+अ+ति' यहाँ "नश्चापदान्तस्य०"ले गरेको अनुस्वार असिद्ध हुनाले स्रन्स् यस्तो देखेर "अनिदितां हल:०"ले नकारको लोप भयो, 'अस्रसत्' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि हुन्छन् ।

| स्रस् लुङ् | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अस्रसत् | अस्रसताम् | अस्रसन् |
| | मध्यमपुरुष | अस्रसः | अस्रसतम् | अस्रसत |
| | उत्तमपुरुष | अस्रसम् | अस्रसाव | अस्रसाम |

अङ् नभएको पक्षमा अस्रंसिष्ट आदि रूप हुन्छन् । यस्तै प्रकारले ध्वंस्, भ्रंस् धातुका रूप पनि जान्नू ।

१५. **भ्रंसु** धातुलाई कसै कसैले भ्रंशु यस्तो पढेका छन् त्यो मान्दा भ्रंश् धातु हुन्छ । ध्वंसु धातु हिड्नु अर्थमा पनि छ । उकारको इत्संज्ञा हुन्छ । लुङ्मा अध्वसत्, अध्वंसिष्ट दुई रूप हुन्छन् ।

१६. **स्रम्भु** धातु विश्वास गर्नु अर्थमा छ । स्रम्भुका उकारको इत्संज्ञा र लोप हुन्छ । (सेट् सकर्मक) लुङ्मा अस्रभत्/अस्रम्भिष्ट । उपसर्गको योगमा- विस्रम्भते (विश्वास गर्छ) ।

१७. **वृतु** धातु रहनु अर्थमा छ । उकारको इत्संज्ञा र लोप हुन्छ । (सेट् अकर्मक)

**वर्तते**– वृत् धातुदेखि लट्, त, शप्, "पुगन्तलघूपधस्य च"ले गुण भयो, 'वर्तते' सिद्ध भयो ।

**ववृते**– वृत् लिट्, त, एश्, 'वृत्+ए' द्वित्व, 'वृतवृत्+ए', अर्, 'वर्त्वृत्+ए', हलादिशेष, 'ववृत्+ए', कित्त्वात् गुणनिषेध 'ववृते' सिद्ध भयो ।

**वर्तिता**- वृत धातुदेखि लुट्, त, तासि प्रत्यय, 'वृत्+तास्+त' इट् आगम, गुण, 'वर्तितास्त', डा, टिलोप भयो, 'वर्तिता' सिद्ध भयो ।

---

**५३८. वृद्भ्यः स्यसनोः १।३।९२॥**

वृतादिभ्यः पञ्चभ्यो वा परस्मैपदं स्यात्स्ये सनि च ॥

**५३९. न वृद्भ्यश्चतुर्भ्यः ७।२।५९॥**

वृतुवृधुशृधुस्यन्दूभ्यः सकारादेरार्धधातुकस्येण् न स्यात् तङानयोरभावे। वर्त्स्यति, वर्तिष्यते। वर्तताम्। अवर्तत। वर्तेत। वर्तिषीष्ट। अवर्तिष्ट। अवृतत्। अवर्त्स्यत्, अवर्तिष्यत ॥

---

**वृद्भ्य इति**– वृत्, वृध्, शृध्, स्यन्द्, कृप् यी पाँचधातुदेखि परस्मैपद होस्, स्य प्रत्यय र सन् प्रत्ययको विषयमा।

**न वृद्भ्य इति**– वृत्, वृध्, शृध्, स्यन्द् धातुदेखि पर रहेका सकार आदिमा हुने आर्धधातुक संज्ञक प्रत्ययको इट् आगम नहोस् तङ् र शानच्,कानच् प्रत्ययको अभावमा।

**वर्त्स्यति**– वृत् धातुदेखि लृट् लकार भयो, 'वृत्+ल्' भयो, "वृद्भ्यः स्यसनोः"ले स्यको विषय हुनाले वैकल्पिक परस्मैपद एकवचन ति भयो, स्य प्रत्यय भयो, 'वृत्+स्यति' यहाँ "आर्धधातुकस्येड्०"ले इट् आगम पाएकोमा "न वृद्भ्यश्चतुर्भ्यः"ले निषेध भयो, "पुगन्तलघूपधस्य च"ले गुण भयो, 'वर्त्स्यति' सिद्ध भयो। यस्तै प्रकारले परस्मैपद भएको पक्षमा वर्त्स्यतः, वर्त्स्यन्ति, आदि रूप हुन्छन्।

**वर्तिष्यते**– परस्मैपद नभएको पक्षमा 'वृत्+ल्' यहाँ आत्मनेपद एकवचन त भयो, एत्व भयो, स्य प्रत्यय, इट्, षत्व भएर 'वर्तिष्यते' सिद्ध भयो। यस्तै प्रकारले वर्तिष्येते, वर्तिष्यन्ते, आदि रूप सिद्ध हुन्छन्।

लोट्मा- वर्तताम्, आदि रूप, लङ्मा– अवर्तत आदि रूप, विधिलिङ्मा- वर्तेत आदि रूप, आशीर्लिङ्मा- वर्तिषीष्ट आदि रूप हुन्छन्।

**अवृतत्**– वृत् धातुदेखि लुङ्लकार आयो, 'अवृत्+ल्' यहाँ "द्युद्भ्यो लुङि"ले वैकल्पिक परस्मैपद भएमा "पुषादिद्युताद्यलृदितः०"ले अङ् हुन्छ, 'अवृतत्' आदि रूप हुन्छन्।

**अवर्तिष्ट**– अङ् नभएको पक्षमा, 'अवृत्+ल' यहाँ लका स्थानमा आत्मनेपद त च्लि प्रत्यय, सिच् आदेश, इट् आगम, गुण, 'अवर्तिस्त' षत्व, ष्टुत्व, 'अवर्तिष्ट' बन्दछ। यस्तै प्रकारले अवर्तिषाताम् आदि रूप हुन्छन्।

**अवर्त्स्यत्**– वृत् धातुदेखि लृङ्, 'अवृत्+ल्' यहाँ स्यको विषय छ र "वृद्भ्यः स्यसनोः"ले वैकल्पिक परस्मैपद एकवचन ति, स्य प्रत्यय, इट् आगमको निषेध, गुण, तिका इकारको "इतश्च"ले लोप भएर 'अवर्त्स्यत्' यो रूप सिद्ध हुन्छ। यस्तै प्रकारले अवर्त्स्यताम् आदि रूप हुन्छन्।

**अवर्तिष्यत**– परस्मैपद नभएका पक्षमा 'अवृत्+ल्' यहाँ लकारका स्थानमा आत्मनेपद एकवचन त, स्य, इट् आगम, षत्व भएर 'अवर्तिष्यत' यो रूप सिद्ध हुन्छ। यस्तै प्रकारले अवर्तिष्येताम् आदि रूप हुन्छन्। मूलमा अङ् भएको रूप दिएको छैन।

**उपसर्गको योगमा अर्थको भिन्नता**

| | | |
|---|---|---|
| प्रवर्तते (लाग्छ) | परावर्तते (फर्कन्छ) | अपवर्तते (छोटो गराउँछ) |
| अनुवर्तते (पछि लाग्छ) | आवर्तते (आवृत्ति गर्छ) | विवर्तते (बदलिन्छ) |
| निवर्तते (हट्छ) | परिवर्तते (परिवर्तन हुन्छ) | निर्वर्तते (समाप्त गर्छ) |

इत्यादि अर्थ हुन्छन्।

**दद** दाने ॥१९॥ ददते ॥

**५४०. न शसददवादिगुणानाम् ६।४।१२६॥**

शसेर्ददेर्वकारादीनां गुणशब्देन विहितो योऽकारस्तस्य च एत्त्वाभ्यासलोपौ न । ददते । ददाते । ददिरे । ददिता । ददिष्यते । ददताम् । अददत । ददेत । ददिषीष्ट । अददिष्ट । अददिष्यत ॥ त्रपूष् लज्जायाम् ॥२०॥ त्रपते ॥

**५४१. तॄफलभजत्रपश्च ६।४।१२२॥**

एषामत एत्त्वमभ्यासलोपश्च स्यात् किति लिटि सेटि थलि च । त्रेपे । त्रपिता, त्रप्ता ।

---

वृधु धातु बढ्नु अर्थमा छ । शृधु धातु अपान वायु छोड्न अर्थमा छ । स्यन्दू धातु बग्नु अर्थमा छ । यी धातुको अन्तिम उकार, ऊकार इत्संज्ञा र लोप हुन्छ । वृध्, शृध्, स्यन्द् धातु बन्दछन् । ( यी तीनै धातु सेट् अकर्मक हुन्) यी धातु यहाँ लघुकौमुदीको मूलमा छैनन् तर प्रसिद्ध धातु हुनाले यहाँ दिइयो । यी धातुका रूप वृत् धातुका जस्तै हुन्छन् । स्यन्द् धातुको लुङ्मा परस्मैपद भएको पक्षमा भने भ्रंश् धातुमा जस्तै "अनिदितां०"ले नकारको लोप हुन्छ । अस्यदत् आदि रूप हुन्छन् । आत्मनेपदमा अस्यन्दिष्ट आदि रूप हुन्छन् । यी धातुहरू द्युतादिगणभित्र पर्दछन् ।

**दद**– धातु दान गर्नु अर्थमा छ । अन्त्य अकारको इत्संज्ञा र लोप हुन्छ । (सेट् सकर्मक)

**ददते**– दद् लट्, त, शप्, एत्व, 'ददते' सिद्ध भयो । यस्तै प्रकारले ददाते आदि रूप हुन्छन् ।

**नशसेति**– शस् धातु, दद् धातु वकार आदिमा हुने धातु र गुणशब्दले विधान गरिएको जो अकार छ त्यसको पनि एत्व र अभ्यास लोप नहोस् ।

**लिट्**– दद लिट्, त, एश्, द्वित्व, 'दद्+दद्+ए' यहाँ "अत एकहल्मध्ये०"ले एत्व र "अभ्यासलोप पाएकोमा "न शसदद०"ले निषेध भयो, 'ददे' सिद्ध भयो । यस्तै प्रकारले 'ददाते', 'ददिरे' आदि रूप लिट्मा हुन्छन् । ददिता, ददिष्यते, आदि रूप पूर्ववत् हुन्छन् ।

**त्रपूष्** धातु लाज मान्नु अर्थमा छ । दीर्घ ऊकार र षकारको इत्संज्ञा भएर लोप हुन्छ । त्रप्धातु बाँकी रहन्छ । (वेट् अकर्मक)

**त्रपते**– त्रप् लट्, त, शप् प्रत्यय भयो, 'त्रपते' सिद्ध भयो । यस्तै प्रकारले 'त्रपेते', 'त्रपन्ते' आदि रूप बन्छन् ।

**तॄफलेति**– तॄ धातु, फल् धातु, भज् धातु, त्रप् धातुका स्थानमा एत्व होस्, अभ्यासको लोप पनि होस् । कित् लिट् पर भएमा र इट्आगम भएको थल् पर भएमा पनि ।

**त्रेपे**– त्रप् लिट्, त, एश्, द्वित्व, 'त्रप्+त्रप्+ए', "तॄफलभज०"ले एत्व र अभ्यास लोप भयो, 'त्रेपे' सिद्ध भयो । यस्तै प्रकारले त्रेपाते आदि रूप सिद्ध हुन्छन् ।

| त्रप् लिट् | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | त्रेपे | त्रेपाते | त्रेपिरे |
| | मध्यमपुरुष | त्रेपिषे | त्रेपाथे | त्रेपिध्वे |
| | उत्तमपुरुष | त्रेपे | त्रेपिवहे | त्रेपिमहे |

**त्रपिता/त्रप्ता**– त्रप् धातुदेखि लुट्, त, तासि प्रत्यय, 'त्रप्+तास्+त' यहाँ तासि प्रत्ययको "आर्धधातुकस्येड्०"ले नित्य इट् पाएकोमा दीर्घऊकारको इत्संज्ञा हुने धातु हुनाले "स्वरतिसूति०"ले वैकल्पिक इट् आगम भयो, 'त्रपितास्+त', तका स्थानमा डा, टिलोप भयो, 'त्रपिता' सिद्ध भयो । इट् आगम नभएको पक्षमा 'त्रप्+तास्+त' यहाँ, डा, टिलोप भयो, 'त्रप्ता' सिद्ध भयो । यस्तै रीतले इट् आगम भएको पक्षमा त्रपितारौ आदि रूप र इट् आगम नभएको पक्षमा त्रप्तारौ आदि रूप लुट्मा हुन्छन् ।

त्रपिष्यते, त्रप्स्यते । त्रपताम् । अत्रपत । त्रपेत । त्रपिषीष्ट, त्रप्सीष्ट । अत्रपिष्ट, अत्रप्त । अत्रपिष्यत, अत्रप्स्यत ॥

इत्यात्मनेपदिनः ॥

## अथोभयपदिनः

**श्रिञ्** सेवायाम् ॥१॥ श्रयति । श्रयते ।

---

**त्रपिष्यते**– स्यको इट् आगम भएको पक्षमा 'त्रपिष्यते' आदि रूप र इट्आगम नभएमा 'त्रप्स्यते' आदि रूप हुन्छन् । लोट्, लङ् र विधिलिङ्मा पूर्ववत् रूप ऊह गर्नू ।

**त्रपिषीष्ट/त्रप्सीष्ट**– आशीर्लिङ्मा 'त्रप्+सीय्+त' यहाँ सीयुट्को "स्वरतिसूति०"ले वैकल्पिक इट् आगम 'त्रप्+इ+सीय्+त', यकारको लोप, तको सुट् आगम, दुवै सकारको षत्व, ष्टुत्व, 'त्रपिषीष्ट' सिद्ध भयो । इट् आगम नभएको पक्षमा 'त्रप्+सीय्+त' यहाँ यकारको लोप, तको सुट् आगम, पछिल्लो सकारको षत्व, ष्टुत्व, 'त्रप्सीष्ट' सिद्ध भयो । यस्तै प्रकारले इट् आगम भएको पक्षमा त्रपिषीयास्ताम् त्रपिषीरन् आदि रूप र इट् आगम नभएको पक्षमा 'त्रप्सीयास्ताम्', आदि रूप हुन्छन् ।

**अत्रपिष्ट**– त्रप् लुङ्, त, सिच् 'अत्रप्+स्+त' वैकल्पिक इट् आगम भएको पक्षमा 'अत्रपिष्ट' सिद्ध भयो । इट् आगम नभएको पक्षमा 'अत्रप्+स्+त' यहाँ "झलो झलि"ले सकारको लोप हुन्छ र 'अत्रप्त' सिद्ध भयो । आताम्मा इट् आगम भएको पक्षमा अत्रपिषाताम्, नभएको पक्षमा अत्रप्साताम् हुन्छ । यस्तै प्रकारले अरू रूप पनि हुन्छन् ।

**अत्रपिष्यत/अत्रप्स्यत**– लृङ्मा इट् आगम भएको पक्षमा 'अत्रपिष्यत' आदि र इट् आगम नभएको पक्षमा 'अत्रप्स्यत' आदि रूप हुन्छन् ।

आत्मनेपदी धातु सकिए ।

---

**अब उभयपदी धातु शुरु हुन्छन् ।**

**श्रिञ्** धातु सेवा गर्नु अर्थमा छ । ञकारको इत्संज्ञा र लोप हुन्छ । यो उभयपदी सेट् सकर्मक धातु हो ।

**श्रयति/श्रयते**– श्रि धातुदेखि "वर्तमाने लट्"ले लट्लकार भयो, 'श्रि+ल्' भयो, "स्वरितञितः०"ले क्रियाफल कर्तामा गएमा लकारका स्थानमा आत्मनेपद त भयो, शप् भयो, 'श्रि+अ+त' भयो, श्रिका इकारका स्थानमा "सार्वधातुका०"ले गुण, अय् आदेश भयो, 'श्रयते' सिद्ध भयो । यस्तै प्रकारले श्रयेते, श्रयन्ते आदि रूप सिद्ध हुन्छन् । क्रियाको फल कर्तामा नगएमा "शेषात्कर्तरि०"ले पस्मैपद एकवचन ति, शप्, गुण, अय् आदेश भयो, 'श्रयति' सिद्ध भयो । यस्तै प्रकारले श्रयतः, श्रयन्ति आदि रूप सिद्ध हुन्छन् । यहाँ साधनप्रक्रिया अनुसार पहिले आत्मनेपदी रूप र पछि परस्मैपदी रूप दिनुपर्ने हो तर "तिप्तस्झि०"ले यो सूत्रमा पहिले परस्मैपदको उपस्थिति हुनाले यहाँ पनि परस्मैपदी रूप पहिले र आत्मनेपदी रूप पछि दिइएको छ ।

| **श्रि.लट्.प.–** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | श्रयति | श्रयतः | श्रयन्ति |
| | मध्यमपुरुष | श्रयसि | श्रयथः | श्रयथ |
| | उत्तमपुरुष | श्रयामि | श्रयावः | श्रयामः |

शिश्राय, शिश्रिये। श्रयितासि, श्रयितासे। श्रयिष्यति, श्रयिष्यते। श्रयतु, श्रयताम्। अश्रयत्, अश्रयत। श्रयेत्, श्रयेत। श्रीयात्, श्रयिषीष्ट। चङ्। अशिश्रियत्, अशिश्रियत। अश्रयिष्यत् अश्रयिष्यत॥

---

| **श्रि.लट्.आ.-** | प्रथमपुरुष | श्रयते | श्रयेते | श्रयन्ते |
|---|---|---|---|---|
| | मध्यमपुरुष | श्रयसे | श्रयेथे | श्रयध्वे |
| | उत्तमपुरुष | श्रये | श्रयावहे | श्रयामहे |

**शिश्राय**– श्रि धातुदेखि लिट् लकार भयो, क्रियाको फलकर्तामा नगएमा "शेषात्कर्तरि०"ले परस्मैपद एकवचन तिप् भयो, णल्, द्वित्व, 'श्रि+श्रि+अ', हलादिशेष 'शिश्रि+अ' "अचोञ्णिति"ले वृद्धि, आय् आदेश भयो, 'शिश्राय' सिद्ध भयो।

**शिश्रियतुः**– 'शिश्रि+अतुस्' यहाँ कित्वाद् गुणनिषेध, यण्लाई बाधेर इयङ् शिश्रियतुः।

**शिश्रियुः**– 'शिश्रि+उस्', कित्वाद् गुणनिषेध, यण्लाई बाधेर इयङ् 'शिश्रियुः' सिद्ध भयो।

**शिश्रयिथ**– 'श्रि+थ', यहाँ श्रिधातु सेट् (उदात्त) हुनाले "आर्धधातुकस्येड्०"ले पाएको इट्आगमको "एकाच उपदेशे०"ले निषेध भएन, इट्आगम भयो, द्वित्व, अभ्यासकार्य भयो, 'शिश्रि+इथ' यहाँ गुण, अय् आदेश भयो, 'शिश्रयिथ' सिद्ध भयो।

**शिश्रियथुः, शिश्रिय**– यी दुई रूप कित्वाद् गुणनिषेध भएपछि इयङ् भएर सिद्ध हुन्छन्।

**शिश्राय/शिश्रय**– उत्तमपुरुषको णल् वैकल्पिक णित् हुनाले णित् भएमा वृद्धि आय् आदेश, णित् नभएमा गुण अय् आदेश भयो, 'शिश्राय', 'शिश्रय' यी दुई रूप सिद्ध भयो।

**शिश्रियिव, शिश्रियिम**– वस्, मस्को इट् आगम, दुवै कित् हुनाले गुणनिषेध भएपछि, इयङ् हुन्छ र दुवै रूप सिद्ध हुन्छन्। आत्मनेपदमा पित् नहुनाले सबै प्रत्यय कित् हुन्छन् र सर्वत्र गुण निषेध र इयङ् हुन्छ।

**आत्मनेपदमा**– शिश्रिये, शिश्रियाते, शिश्रियिरे। शिश्रियिषे, शिश्रियाथे, ध्वम्मा। "विभाषेटः"ले ढत्व विकल्पले हुन्छ– शिश्रियिढ्वे/शिश्रियिध्वे। शिश्रिये, शिश्रियिवहे, शिश्रियिमहे।

**लुट् परस्मैपदमा**– श्रयिता, श्रयितारौ, श्रयितारः आदि रूप हुन्छन्। आत्मनेपदमा पनि प्रथमपुरुषमा श्रयिता, श्रयितारौ, श्रयितारः समान रूप हुन्छन् र मध्यमपुरुषमा श्रयितासे, श्रयितासाथे, श्रयिताध्वे। उत्तमपुरुषमा श्रयिताहे, श्रयितास्वहे, श्रयितास्महे यी रूप हुन्छन्।

**लोट् परस्मैपदमा**– श्रयतु/श्रयतात्, श्रयताम्, श्रयन्तु, आदि रूप हुन्छन्

**आत्मनेपदमा**– श्रयताम्, श्रयेताम्, श्रयन्ताम् आदि रूप हुन्छन्।

**लङ् परस्मैपदमा**– अश्रयत्, अश्रयताम् आदि रूप हुन्छन्। आत्मनेपदमा अश्रयत, अश्रयेताम् आदि रूप हुन्छन्। विधिलिङ्मा परस्मैपदमा श्रयेत्, श्रयेताम् आदि रूप हुन्छन्। आत्मनेपदमा श्रयेत, श्रयेयाताम्, श्रयेरन् आदि रूप हुन्छन्।

**आशीर्लिङ् परस्मैपदमा**– "अकृत्सार्वधातुकयोः०"ले दीर्घ हुन्छ। श्रीयात्, श्रीयास्ताम् आदि रूप हुन्छन्।

**आत्मनेपदमा**– श्रयिषीष्ट, श्रयिषीयास्ताम् आदि रूप हुन्छन्। ध्वम्मा श्रयिषीढ्वम्/श्रयिषीध्वम् दुई रूप हुन्छन्।

**लुङ् परस्मैपदमा**– णिश्रिद्रुस्रुभ्यः०"ले च्लि का स्थानमा चङ् हुन्छ। अशिश्रियत्, अशिश्रियताम् आदि रूप हुन्छन्। **आत्मनेपदमा** अशिश्रियत, अशिश्रियेताम् आदि रूप हुन्छन्।

**लृङ्परस्मैपदमा**– अश्रयिष्यत्, अश्रयिष्यताम् आदि रूप, **आत्मनेपदमा** अश्रयिष्यत आदि रूप हुन्छन्।

भृञ् भरणे ॥२॥ भरति, भरते । बभार । बभ्रतुः । बभ्रुः । बभर्थ । बभृव । बभृम । बभ्रे । बभृषे । भर्तासि, भर्तासे । भरिष्यति, भरिष्यते । भरतु, भरताम् । अभरत्, अभरत । भरेत्, भरेत ॥

**५४२. रिङ् शयग्लिङ्क्षु ७।४।२८॥**

शे यकि यादावार्धधातुके लिङि च ऋतो रिङ् आदेशः स्यात् । रीङि प्रकृते रिङ्विधानसामर्थ्याद्दीर्घो न । भ्रियात् ॥

---

भृञ् धातु पालन गर्नु, भन्ने अर्थमा छ । ञकारको इत्संज्ञा हुन्छ । यो धातु उभयपदी हो । (अनिट् सकर्मक)

**भरति**– भृ धातुदेखि लट्, परस्मैपद प्रथमपुरुष एकवचन तिप्, शप्, गुण भयो, 'भरति' सिद्ध भयो । यस्तै प्रकारले भरतः भरन्ति आदि रूप हुन्छन् । आत्मनेपदमा भृ लट्, त, शप्, गुण, एत्व, 'भरते' सिद्ध भयो । यस्तै प्रकारले भरेते, भरन्ते आदि रूप हुन्छन् ।

**बभार**– भृ लट्, परस्मैपद तिप्, णल्, 'भृ+अ', 'भृ+भृ+अ', 'भर्+भृ+अ', 'भभृ+अ', 'बभृ+अ', 'बभार' सिद्ध भयो ।

**बभ्रतुः**– पूर्ववत् 'बभृ+अतुस्' यण् 'बभ्रतुः' सिद्ध भयो । यस्तै प्रकारले 'बभ्रुः' सिद्ध हुन्छ ।

**बभर्थ**– 'भृ+थ' यहाँ क्रादिनियमले इट्निषेध, द्वित्वादि, गुण 'बभर्थ' सिद्ध भयो ।

**बभ्रथुः बभ्र**– पूर्ववत् 'बभृ+अथुस्', 'बभृ+अ', 'बभ्रथुः', 'बभ्र' सिद्ध हुन्छन् ।

**बभार/बभर**– उत्तमपुरुष णल्, वैकल्पिक णित् हुनाले एक पक्षमा वृद्धि, एक पक्षमा गुण, 'बभार', 'बभर' यी रूप सिद्ध हुन्छन् ।

**बभृव, बभृम**– क्रादिनियमले इट्निषेध भयो, पूर्ववत् 'बभृव', 'बभृम' यी दुई रूप सिद्ध भए ।

**आत्मनेपदमा**– से, ध्वम्, वहि, महिमा क्रादिनियमले इट्निषेध, ध्वम्मा ढत्व, अजादि विभक्तिमा यण्, सर्वत्र कित्वात् गुणनिषेध हुन्छ ।

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | बभ्रे | बभ्राते | बभ्रिरे |
| मध्यमपुरुष | बभृषे | बभ्राथे | बभृढ्वे |
| उत्तमपुरुष | बभ्रे | बभृवहे | बभृमहे |

लुट्मा तासि प्रत्ययको "एकाच०"ले इट् निषेध हुन्छ ।

प्र.पु.मा भर्ता, भर्तारौ, भर्तारः परस्मैपद र आत्मनेपदमा समान रूप हुन्छन् ।

**मध्यमपुरुष र उत्तमपुरुषमा**– परस्मैपदमा भर्तासि, भर्तास्थः आदि र आत्मनेपदमा भर्तासे, भर्तासाथे इत्यादि रूप हुन्छन् ।

**लृट् परस्मैपदमा**– भरिष्यति आदि र आत्मनेपदमा भरिष्यते आदि रूप हुन्छन् । यहाँ "ऋद्धनोःस्ये"ले इट्आगम हुन्छ ।

**लङ् परस्मैपदमा**– अभरत् आदि र आत्मनेपदमा अभरत आदि रूप हुन्छन् ।

**रिङ् शयेति**– श प्रत्यय परभएमा, यक् प्रत्यय पर भएमा र यकार आदिमा हुने आर्धधातुक लिङ् पर भएमा पनि ऋकारान्त धातुका स्थानमा रिङ् आदेश होस् ।

**रीङीति**– रीङ्को प्रकरणमा रिङ्विधान गरेको हुनाले "अकृत्सार्वधातुकयोः०"ले दीर्घ हुँदैन ।

**भ्रियात**– आशीर्लिङ् परस्मैपदमा- 'भृ+ल' ति, यासुट् 'भृ+यास्+ति' इकारको लोप, सकारको संयोगादिलोप 'भृ+यात्' "रिङ्शयक्०"ले भृका ऋकारका स्थानमा रि भयो, 'भ्रियात्' सिद्ध भयो । यस्तै प्रकारले भ्रियास्ताम्, भ्रियासुः, आदि रूप हुन्छन् ।

**५४३. उश्च १।२।१२॥**

ऋवर्णात्परौ झलादी लिङ्सिचौ कितौ स्तस्तङि । भृषीष्ट । भृषीयास्ताम् । अभार्षीत् ॥

**५४४. ह्रस्वादङ्गात् ८।२।२७॥**

सिचो लोपो झलि । अभृत । अभृषाताम् । अभरिष्यत्, अभरिष्यत ॥ **हृञ्** हरणे ॥३॥

---

अब आत्मनेपदमा-

**उश्चेति**– ऋवर्णदेखि पर रहेका झल् आदिमा हुने लिङ् र सिच् कित् होऊन्, तङ्का विषयमा ।

**भृषीष्ट**– भृ लिङ्, त, सीयुट्, इट्निषेध, 'भृ+सीय्+त', यलोप सुट्, 'भृ+सीस्त' यहाँ भृका ऋकारदेखि पर झलादि लिङ् सीस्त छ, तङ्को विषय पनि हो र "उश्च" लगाएर सीस्त यो कित् भयो, "सार्वधातुका०"ले पाएको गुण "क्ङिति च"ले निषेध भयो, दुवै सकारको षत्व र तकारको ष्टुत्व भएर टकार भयो, 'भृषीष्ट' सिद्ध भयो । यस्तै प्रकारले 'भृषीयास्ताम्' आदि रूप हुन्छन् ।

**अभार्षीत्**– लुङ् परस्मैपदमा 'अभृ+स्+ति' यहाँ इट् निषेध, वृद्धि, 'अभार्+स्+ति', तिका इकारको "इतश्च"ले लोप, ईट् आगम 'अभार्+स्+ईत्' षत्व, वर्णमेलन, 'अभार्षीत्' सिद्ध भयो । यस्तै प्रकारले आभार्ष्टाम् इत्यादि रूप हुन्छन् ।

| भृ.लुङ्.प. | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | आभार्षीत् | अभार्ष्टाम् | अभार्षुः |
| | मध्यमपुरुष | अभार्षीः | अभार्ष्टम् | अभार्ष्ट |
| | उत्तमपुरुष | अभार्षम् | अभार्ष्व | अभार्ष्म |

**ह्रस्वादिति**– ह्रस्व अन्तमा हुने अङ्गदेखि पर रहेको सिच्को लोप होस् झल् पर भएमा ।

**अभृत**– आत्मनेपदमा 'अभृ+ल्', 'अभृ+त', सिच् इट्निषेध 'अभृस्त' यहाँ "ह्रस्वादङ्गात्"ले सिच्को लोप भयो, "उश्च"ले कित्त्व भएको हुनाले गुणनिषेध भयो, 'अभृत' सिद्ध भयो ।

**अभृषाताम्**– 'अभृ+स्+आताम्', "उश्च"ले कित्त्व गुणनिषेध षत्व, 'अभृषाताम्' सिद्ध भयो । यस्तै प्रकारले अजादिविभक्तिमा "उश्च"ले कित्त्व र गुणनिषेध भएपछि, षत्त्व र वर्णमेलन भएर रूप सिद्ध हुन्छन्, हलादिविभक्ति थास् झल् हुनाले सिच्को लुक् हुन्छ । वहि, महिमा वकार, मकार झल् नहुनाले सिच्को लोप हुन्न । ध्वम्मा ढत्व हुन्छ ।

| भृ.लुङ्.आ. | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अभृत | अभृषाताम् | अभृषत |
| | मध्यमपुरुष | अभृथाः | अभृषाथाम् | अभृढ्वम् |
| | उत्तमपुरुष | अभृषि | अभृष्वहि | अभृष्महि |

**लृङ्**– परस्मैपदमा- अभरिष्यत् आदि र आत्मनेपदमा- अभरिष्यत आदि रूप हुन्छन् । "ऋद्धनोः स्ये"ले इट् आगम हुन्छ ।

**हृञ्** धातु हरण गर्नु, चोर्नु, नाश गर्नु, लैजानु अर्थमा छ । ञकारको इत्संज्ञा लोप हुन्छ । यो धातु उभयपदी हो । (अनिट् सकर्मक)

हृ धातुका रूप र भृ धातुका रूप लिट् लकारमा बाहेक सर्वत्र समान हुन्छन् । लिट् परस्मैपदमा व, म, मा क्रादिनियमले इट् आगम हुन्छ र जह्रिव, जह्रिम यी रूप हुन्छन् ।

---

हरति, हरते । जहार । जहर्थ । जह्रिव । जह्रिम । जह्रे । जह्रिषे । हर्तासि, हर्तासे । हरिष्यति, हरिष्यते । हरतु, हरताम् । अहरत्, अहरत । हरेत्, हरेत । ह्रियात्, हृषीष्ट । हृषीयास्ताम् । अहार्षीत्, अहृत । अहरिष्यत्, अहरिष्यत ॥ **धृञ्** धारणे ॥४॥ धरति, धरते ॥ **णीञ्** प्रापणे ॥५॥ नयति, नयते ॥

---

आत्मनेपदमा थासको स्थानमा भएको सेको, ध्वम्को र वहि महिको पनि क्रादि नियमले इट् आगम हुँदा जह्रिषे, जह्रिढ्वे/ध्वे, जह्रिवहे, जह्रिमहे यी रूप हुन्छन् । यति फरक छ–

उपसर्गको योगमा अर्थको भिन्नता-

| | |
|---|---|
| प्रहरति (हान्छ) | आहरति (खान्छ) |
| अपहरति (चोर्छ) | उद्धरति (उद्धार गर्छ) |
| संहरति (नाश गर्छ) | प्रतिहरति (पाले बस्छ) |
| अनुहरति (नकल गर्छ) | परिहरति (हटाउँछ) |
| विहरति (खेल्छ) | उपसंहरति (समाप्त गर्छ) |
| अभ्यवहरति (खान्छ) | |

**धृञ्** धातु धारण गर्नु अर्थमा छ । ञ्को इत्संज्ञा लोप हुन्छ । यो धातु उभयपदी हो ।(अनिट् सकर्मक) यस धातुका सबै रूप हृ धातुका जस्तै हुन्छन् । दिग्दर्शनको निमित्त यहाँ लिट्का रूप दिइन्छ -

| धृ लिट् प- | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | दधार | दध्रतुः | दध्रुः |
| | मध्यमपुरुष | दधर्थ | दध्रथुः | दध्र |
| | उत्तमपुरुष | दधार/दधर | दध्रिव | दध्रिम |
| **धृ लिट् आ-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
| | प्रथमपुरुष | दध्रे | दध्राते | दध्रिरे |
| | मध्यमपुरुष | दध्रिषे | दध्राथे | दध्रिढ्वे/ध्वे |
| | उत्तमपुरुष | दध्रे | दध्रिवहे | दध्रिमहे |

**णीञ्** धातु पुऱ्याउनु, लग्नु, अर्थमा छ । ञकारको इत्संज्ञा र लोप हुन्छ । यो धातु उभयपदी, सकर्मक, अनिट् हो । किनकि "ऊदॄदन्तैः०" यस कारिका भित्र पर्दैन । एकाच् छ, अजन्त पनि छ ।

**लट्**– परस्मैपदमा- नयति, नयतः, नयन्ति आदि रूप र आत्मनेपदमा- नयते, नयेते, नयन्ते आदि रूप हुन्छन् ।

**निनाय**– नी धातुदेखि लिट् परस्मैपद तिप्, णल्, द्वित्वादि, 'निनी+अ' वृद्धि, आय् आदेश भयो, 'निनाय' सिद्ध भयो ।

**निन्यतुः**– 'निनी+अतुस्' यहाँ "इको यणचि"लाई बाधेर इयङ् पायो, इयङ्लाई बाधेर "एरनेकाचोऽसंयोगपूर्वस्य"ले यण् पायो, त्यसलाई बाधेर "सार्वधातुकार्ध०"ले गुण पाएकोमा अतुस्को कित्त्व हुनाले "क्ङिति च"ले निषेध भयो, "बाधकाभावे०" लाएर "एरनेकाचो०"ले यण् भयो, रुत्व, विसर्ग भयो, 'निन्यतुः' सिद्ध भयो । यस्तै प्रकारले 'निन्युः', आदिमा पनि यण् हुन्छ ।

**निनयिथ/निनेथ**– 'नी+थ' यहाँ नी, यो, अजन्त र अकारवान् धातु छ, तासि प्रत्ययमा नित्यानिट् छ, र "अजन्तोऽकारवान् वा यस्तास्यनिट् थलि वेडयम्" यो कारिकाऽनुसार थल्मा विकल्पले इट् भयो, 'नी+इथ', द्वित्वादि, 'निनी+इथ' गुण, अय् आदेश 'निनयिथ' सिद्ध भयो । इट् आगम नभएमा द्वित्वादि, गुण, 'निनेथ' सिद्ध भयो, यसरी दुई रूप सिद्ध भए ।

**डुपचष्** पाके ॥६॥ पचति, पचते । पपाच । पेचिथ, पपक्थ ।

---

व, म,मा क्रादिनियमले नित्य इट् आगम, "एरनेकाचो०"ले यण् भएर निन्यिव, निन्यिम यी रूप बन्दछन् ।

| **नी.लिट्.प.-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | निनाय | निन्यतुः | निन्युः |
| | मध्यमपुरुष | निनयिथ/निथ | निन्यथुः | निन्य |
| | उत्तमपुरुष | निनाय/निनय | निन्यिव | निन्यिम । |

आत्मनेपदमा–से, ध्वे, वहे, महेमा नित्य इट् आगम, अजादि विभक्ति पर भएमा "एरनेकाच०"ले यण् हुन्छ । ध्वेमा वैकल्पिक ढत्व हुन्छ ।

| **नी.लिट्.आ.-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | निन्ये | निन्याते | निन्यिरे |
| | मध्यमपुरुष | निन्यिषे | निन्याथे | निन्यिढ्वे/ध्वे |
| | उत्तमपुरुष | निन्ये | निन्यिवहे | निन्यिमहे |

लुट् आदि लकारका एक-एक रूपहरू दिग्दर्शनको निमित्त दिइन्छ- नेता । नेष्यति,नेष्यते । नयतु, नयताम् । अनयत्, अनयत । नयेत्, नयेत । नीयात्, नेषीष्ट । अनैषीत् अनेष्ट । अनेष्यत् अनेष्यत ।

उपसर्गयोगमा अर्थको भिन्नता-

| | |
|---|---|
| प्रणयति (प्रेम गर्छ) | अनुनयति (फुल्याउँछ/मनाउँछ) |
| अपनयति (हटाउँछ) | विनयति (विनम्र हुन्छ/विनय गर्छ) |
| आनयति (ल्याउँछ) | विनयते (शिक्षा दिन्छ) |
| उन्नयति (उठाउँछ) | अभिनयति (अभिनय गर्छ) |
| परिणयति (विवाह गर्छ) | उपनयति (व्रतबन्ध गर्छ) |

**डुपचष्** धातु पकाउनु अर्थमा छ । "डु" र "अष्" को इत्संज्ञा लोप हुन्छ । पच् धातु बाँकी रहन्छ । यो धातु अकार स्वरित हुनाले, उभयपदी हो । (अनिट् सकर्मक) लट्मा-पचति, पचते । लिट्-प्रथमपुरुष एकवचनमा-पपाच, द्विवचन, बहुवचनमा, एत्व र अभ्यासलोप 'पेचतुः', 'पेचुः' हुन्छ ।

**पेचिथ/पपक्थ**– अकारवान् तासि प्रत्ययमा नित्यानिट् हुनाले यो थल्मा वेट् हो । इट् भएको पक्षमा एत्व र अभ्यासलोप भएपछि 'पेचिथ' हुन्छ । इट् आगम नभएको पक्षमा 'पपच्+थ' यहाँ "चोःकुः"ले कुत्व भएर 'पपक्थ' हुन्छ । यसरी दुई रूप हुन्छन् ।

व, ममा क्रादिनियमले नित्य इट् आगम हुन्छ, यस्तै आत्मनेपदको से, ध्वे, वहे, महे, मा पनि नित्य इट् आगम हुन्छ ।

| | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| **पच्.लिट्.प.-** | प्रथमपुरुष | पपाच | पेचतुः | पेचुः |
| | मध्यमपुरुष | पेचिथ/पपक्थ | पेचथुः | पेच |
| | उत्तमपुरुष | पपाच/पपच | पेचिव | पेचिम |
| **पच्.लिट्.आ.-** | प्रथमपुरुष | पेचे | पेचाते | पेचिरे |
| | मध्यमपुरुष | पेचिषे | पेचाथे | पेचिध्वे |
| | उत्तमपुरुष | पेचे | पेचिवहे | पेचिमहे |

पेचे । पक्तासि, पक्तासे ॥ **भज** सेवायाम् ॥७॥ भजति, भजते । बभाज, भेजे । भक्तासि, भक्तासे । भक्ष्यति, भक्ष्यते । अभाक्षीत्, अभक्त । अभक्षाताम् ॥ **यज** देवपूजासङ्गतिकरणदानेषु ॥८॥ यजति, यजते ॥

**५४५. लिटचभ्यासस्योभयेषाम् ६।१।१७॥**

वच्यादीनां ग्रह्यादीनां चाभ्यासस्य सम्प्रसारणं लिटि ।

---

**लुट्मा** प्रथमपुरुषमा परस्मैपदमा र आत्मनेपदमा समान रूप हुन्छन् मध्यमपुरुषमा र उत्तम पुरुषमा भिन्नता हुन्छ, पक्तासि पक्तासे आदिरूप हुन्छन् । तासि प्रत्ययको इट् आगम "एकाच उपदेश०"ले निषेध हुन्छ ।

**लृट्मा-** स्य प्रत्ययको "एकाच उपदशे०"ले इट्निषेध हुन्छ । पक्ष्यति, पक्ष्यते आदि रूप हुन्छन् ।

**लोट्मा**- पचतु, पचताम् आदि, **लङ्**मा अपचत् । अपचत आदि ।, **विधिलिङ्**मा पचेत्, पचेत आदि । **आशीलिंङ्**मा पच्यात्, पक्षीष्ट आदि । **लुङ्** परस्मैपदमा- "वदव्रजहलन्तस्याचः"ले वृद्धि हुन्छ । आत्मनेपदमा- "वदव्रज०" लाग्दैन । सबै लुङ्का रूपहरू-

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| **पच् लुङ् प.-** | प्रथमपुरुष | अपाक्षीत् | अपाक्ताम् | अपाक्षुः |
| | मध्यमपुरुष | अपाक्षीः | अपाक्तम् | अपाक्त |
| | उत्तमपुरुष | अपाक्षम् | अपाक्ष्व | अपाक्ष्म |
| **पच् लुङ् आ.-** | प्रथमपुरुष | अपक्त | अपक्षाताम् | अपक्षत |
| | मध्यमपुरुष | अपक्थाः | अपक्षाथाम् | अपग्ध्वम् |
| | उत्तमपुरुष | अपक्षि | अपक्ष्वहि | अपक्ष्महि |

**लृङ्मा-** अपक्ष्यत्, अपक्ष्यत आदि रूप हुन्छन् । 'पच्+स्यति' यहाँ झल् पर हुनाले "चोः कुः"ले कुत्व अनि षत्व हुन्छ र कष संयोग भएर क्ष हुन्छ ।

**भज** धातु सेवा गर्नु अर्थमा छ । अकारको इत्संज्ञा लोप हुन्छ, अकार स्वरित हुनाले यो धातु पनि उभयपदी हो । (अनिट् सकर्मक ) जान्त अनुदात्त प्रकरणमा यो धातु पढिएको छ । पच् धातु र भज् धातुका रूप समान हुन्छन् । यस धातुमा पनि झल् पर भएको स्थानमा "चोःकुः"ले कुत्व हुन्छ । अनि जहाँ खर् पर छ त्यहाँ "खरि च" लाग्छ । अन्यत्र लाग्दैन ।

**यज** धातु देवताको पूजा गर्नु, मिलाउनु र दान गर्नु अर्थमा छ । यजको अकार स्वरित हो । त्यसको इत्संज्ञा र लोप हुन्छ । (अनिट्/अनुदात्त सकर्मक) अनुदात्त जान्त धातुमा यो धातु पढिएको छ ।

**यजति**- यज् लट्, तिप्, शप् भयो, 'यजति' सिद्ध भयो । यजतः इत्यादि रूप पूर्ववत् हुन्छन् ।

**यजते**- यज् लट्, त, शप्, एत्व भयो, 'यजते' सिद्ध भयो । यजेते इत्यादि रूप पनि पूर्ववत् हुन्छन् ।

**लिटीति**- वच् धातु, स्वप् धातु, यजादि धातु र ग्रहआदि धातुका अभ्यासका स्थानमा संप्रसारण होस्, लिट् पर भएमा ।

यो सूत्रमा वच् आदि धातु भन्नाले "वचिस्वपियजादीनां किति" यस सूत्रमा उल्लिखित वच् धातु, स्वप् धातु र यजादि धातु हुन् । यजादि धातु तल छन्-

**"यजिर्वपिर्वहिश्चैव वसिर्व्येञ् वेञ् इत्यपि ।**

**ह्वेञ्वदी श्वयतिश्चैव यजाद्याः स्युरिमे नव ॥"**

इयाज ॥

**५४६. वचिस्वपियजादीनां किति ६।१।१५॥**

वचिस्वप्योर्यजादीनां चाभ्यासस्य सम्प्रसारणं स्यात् किति ।

ईजतु : । ईजु : । इयजिथ, इयष्ठ । ईजे ।

---

ग्रह आदि धातु भन्नाले "ग्रहिज्यावयिव्यधि०" आदि सूत्रमा उल्लिखित ग्रह, ज्या, वय, व्यध, वश, व्यच, व्रश्च, प्रच्छ, भ्रस्ज यी ९ धातु हुन् ।

**इयाज**– यज धातुदेखि लिट्, तिप्, णल्, 'यज्+अ' द्वित्व 'यज्+यज्+अ' भएपछि, हलादि शेष भयो, 'ययज्+अ' भयो, यो यज् धातु यजादिभित्र पर्ने हुनाले "लिट्यभ्यासस्योभयेषाम्"ले अभ्यासको सम्प्रसारण हुँदा यकारको इकार भयो, पूर्वरूप भयो, 'इ+यज्+अ' भयो, वृद्धि भयो, 'इयाज' सिद्ध भयो ।

[८१] **ईजतुः**– यज् धातुदेखि लिट् लकार, तस्, अतुस्, 'यज्+अतुस्' भयो, द्वित्वलाई बाधेर "वचिस्वपियजादीनां किति"ले परत्वात्संप्रसारण भयो, "संप्रसारणं तदाश्रयं च कार्य बलवत्" यो परिभाषा लाएर पूर्वरूप पनि पहिले भयो, 'इज्+अतुस्', "बाधकाभावे०" लाएर द्वित्व भयो, 'इज्+इज्+अतुस्' हलादिशेष भयो, 'इ+इज्+अतुस्', "अकः सवर्णे०"ले दीर्घ भयो, 'ईजतुः' सिद्ध भयो । यस्तै प्रकारले ईजुः पनि सिद्ध हुन्छ ।

**इयजिथ/इयष्ठ**– यज् लिट्, सिप्, सिप्का स्थानमा थल्, 'यज्+थ' "आर्धधातुकस्येड्०"ले पाएको इट् "एकाच उपदेशे०"ले निषेध भयो, "कृसृभृवृ०"ले पुनः इट् पायो, "उपदेशेऽत्वतः"ले निषेध भएपछि "ऋतो भारद्वाजस्य"ले भारद्वाजका मतमा इट् भयो, 'यज्+इथ' भयो, इट् नभएका पक्षमा 'यज्+थ' यस्तै छ, दुवै पक्षमा द्वित्व भयो, 'यज्+यज्+इथ' 'यज्+यज्+थ', दुवै पक्षमा हलादिशेष भयो, 'ययज्+इथ', 'ययज्+थ', "लिट्यभ्यासस्यो०"ले दुवै पक्षमा संप्रसारण पूर्वरूप भयो, इट् भएका पक्षमा 'ज्' इकारमा लाग्यो, 'इयजिथ' सिद्ध भयो । इट् नभएको पक्षमा 'इयज्+थ' यहाँ "व्रश्चभ्रस्ज०"ले षत्व भयो, ष्टुत्व भयो, 'इयष्ठ' सिद्ध भयो ।

अथुस् र अमा अतुस्मा जस्तै प्रक्रिया भएर 'ईजथुः', 'ईज' यी रूप सिद्ध हुन्छन् ।

**इयाज/इयज**– उत्तमपुरुषमा णल्को णित्त्व वैकल्पिक हुनाले णित्वद्भावपक्षमा वृद्धि भएर 'इयाज' हुन्छ । वृद्धि नभएका पक्षमा 'इयज' हुन्छ । वस्, मस्मा क्रादिनियमले नित्य इट् आमग हुन्छ, संप्रसारण भएपछि द्वित्व हुन्छ, ईजिव, ईजिम यी रूप हुन्छन् ।

**ईजे**– आत्मनेपदमा 'यज्+त', तका स्थानमा एश्, 'यज्+ए', "वचिस्वपि०"ले सम्प्रसारण, पूर्वरूप, द्वित्व, अभ्यासकार्य, दीर्घ भयो, 'ईजे' सिद्ध भयो । यस्तै प्रकारले ईजाते, ईजिरे आदि रूप सिद्ध हुन्छन्, से, ध्वे, वहे, महे, मा क्रादिनियमले नित्य इट् आगम हुन्छ ।

| यज् लिट् आ. | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | ईजे | ईजाते | ईजिरे |
| | मध्यमपुरुष | ईजिषे | ईजाथे | ईजिध्वे |
| | उत्तमपुरुष | ईजे | ईजिवहे | ईजिमहे |

---

८१ कित्, लिट्मा (तिप्, सिप्, मिप् बाहेक अन्यत्र) सम्प्रसारण भएपछि द्वित्व हुन्छ तिप्, सिप्, मिप्मा द्वित्व भएपछि संप्रसारण हुन्छ ।

यष्टा ॥

**५४७. षढोः कः सि ८।२।४१॥**

यक्ष्यति, यक्ष्यते । इज्यात्, यक्षीष्ट । अयाक्षीत्,

---

**लुट्– परस्मैपदमा– यष्टा**– यज् लुट्, तिप्, तासि प्रत्यय, इट् आगमको निषेध 'यज्+तास्+ति', "व्रश्चभ्रस्ज्०"ले षत्व, ष्टुत्व, 'यष्टास्+ति' डाआदेश, टिलोप, 'यष्टा' सिद्ध भयो । यस्तै प्रकारले यष्टारौ, यष्टारः, यष्टासि, यष्टास्थः, यष्टास्थ । यष्टास्मि, यष्टास्वः, यष्टास्मः । यी रूप सिद्ध हुन्छन् ।

आत्मनेपदमा पनि प्रथमपुरुषमा यष्टा, यष्टारौ, यष्टारः यिनै रूप हुन्छन् । मध्यमपुरुष र उत्तमपुरुषमा क्रमशः यष्टासे, यष्टासाथे, यष्टाध्वे । यष्टाहे, यष्टास्वहे, यष्टास्महे यी रूप हुन्छन् ।

**षढोरिति**– षकार र ढकारका स्थानमा ककार होस्, दन्त्य सकार पर भएमा ।

**यक्ष्यति**– यज् लृट, ति, स्य प्रत्यय, इट्निषेध, 'यज्+स्य+ति' यज्का जकारका स्थानमा "व्रश्चभ्रस्ज०"ले षत्व भयो, 'यष्+स्यति' भयो, "षढोः कः सि"ले यष्को मूर्धन्य षकारका स्थानमा ककार भयो, 'यक्+स्यति' "आदेशप्रत्यययोः"ले षत्व भयो, क् र ष्को संयोग भएर क्ष् भयो, 'यक्ष्यति' सिद्ध भयो । यस्तै प्रकारले यक्ष्यतः, यक्ष्यन्ति आदि परस्मैपदका अरू रूप र आत्मनेपदका यक्ष्यते, यक्ष्येते, यक्ष्यन्ते आदि रूप सिद्ध हुन्छन् ।

**लोट् परस्मैपदमा**– यजतु/तात्, यजताम्, यजन्तु आदि र आत्मनेपदमा यजताम्, यजेताम् आदि रूप हुन्छन् ।

**लङ् परस्मैपदमा**– अयजत् । अयजताम्, अयजन्, आदिरूप र आत्मनेपदमा अयजत अयजेताम्, अयजन्त आदि रूप हुन्छन् । विधिलिङ्मा यजेत्, यजेत आदि रूप हुन्छन् ।

**आशीर्लिङ्मा परस्मैपदमा– इज्यात्**– यज् विधिलिङ् 'यज्+ल्', तिप्, यासुट्, 'यज्+यास्+ति' यहाँ "किदाशिषि"ले यासुट्का कित्व भएकोले "वचिस्वपियजादीनां०"ले सम्प्रसारण, पूर्वरूप भयो, 'इज्+यास्+ति' तिका इकारको "इतश्च"ले लोप, सकारको संयोगादिलोप भयो, 'इज्यात्' सिद्ध भयो । यस्तै प्रकारले इज्यास्ताम् आदि रूप सिद्ध हुन्छन् ।

**आत्मनेपदमा– यक्षीष्ट**– यज् धातुदेखि आशीर्लिङ्, त, सीयुट्, 'यज्+सीय्+त' इट् आगमको निषेध, यलोप, सुट् आगम, 'यज्+सीस्त', "व्रश्चभ्रस्ज०"ले षत्व, "षढोः कः षि"ले कत्व भयो, 'यक्+सीस्त' यहाँ दुवै सकारको षत्व, ष्टुत्व भयो, 'यक्+षीष्ट' ककार र षकार मिलेर क्ष भयो, 'यक्षीष्ट' सिद्ध भयो ।

| **यज्.आ.लि.आ.** | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | यक्षीष्ट | यक्षीयास्ताम् | यक्षीरन् |
| | मध्यमपुरुष | यक्षीष्ठाः | यक्षीयास्थाम् | यक्षीध्वम् |
| | उत्तमपुरुष | यक्षीय | यक्षीवहि | यक्षीमहि |

**लुङ् परस्मैपद– अयाक्षीत्**– यज् लुङ्, यज् ल्, अट् आगम, 'अयज्+ल्' तिप्, च्लि, सिच्, इट्निषेध, 'अयज्+स्+ति', तिका इकारको "इतश्च"ले लोप ईट्, 'अयज्+स्+ईत्' "वदव्रज०"ले वृद्धि 'अयाज्+स्+ईत्', षत्व, कत्व, षत्व, क्षत्व, 'अयाक्षीत्' ।

**अयाष्टाम्**– तस्मा, 'अयाज्+स्+ताम्' भएपछि "झलो झलि"ले सलोप, 'अयाज्+ताम्'

---

अयष्ट ॥ वह प्रापणे ॥९॥ वहति, वहते । उवाह । ऊहतुः । ऊहुः । उवहिथ ॥

**५४८. झषस्तथोर्धोऽधः ८।२।४०॥**

झषः परयोस्तथयोर्धः स्यान्न तु दधातेः ॥

**५४९. ढो ढे लोपः ८।३।१३॥**

**५५०. सहिवहोरोदवर्णस्य ६।३।११२॥**

अनयोरवर्णस्य ओत्स्याड्ढलोपे । उवोढ ।

---

षत्व, ष्टुत्व भयो, 'अयाष्टाम्' सिद्ध भयो, यस्तै प्रकारले अरू रूप पनि सिद्ध हुन्छन्–

| **यज्. लुङ्.प.** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अयाक्षीत् | अयाष्टाम् | अयाक्षुः |
| | मध्यमपुरुष | अयाक्षीः | अयाष्टम् | अयाष्ट |
| | उत्तमपुरुष | अयाक्षम् | अयाक्ष्व | अयाक्ष्म |

**आत्मनेपदमा– अयष्ट–** 'अयज्+त' यहाँ च्लि, सिच्, इट्निषेध, सिच्को सकारको लोप 'अयज्+त', षत्व, ष्टुत्व, 'अयष्ट' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि ऊह गर्नू । सबै रूप-

| **यज्. लुङ्.आ.** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अयष्ट | अयक्षाताम् | अयक्षत |
| | मध्यमपुरुष | अयष्ठाः | अयक्षाथाम् | अयड्ढ्वम् |
| | उत्तमपुरुष | अयक्षि | अयक्ष्वहि | अयक्ष्महि |

**लृङ् परस्मैपदमा–** अयक्ष्यत् आदि र आत्मनेपदमा अयक्ष्यत आदि रूप हुन्छन् ।

**वह** धातु पु¥याउनु बोक्नु अर्थमा छ । अकार स्वरित हो इत्संज्ञा र लोप हुन्छ । यो धातु उभयपदी हो । (अनिट् सकर्मक)

**लट्–** परस्मैपदमा- 'वहति' आदि र आत्मनेपदमा- 'वहते' आदि रूप हुन्छन् ।

**लिट् परस्मैपद– उवाह–** वह लिट्, तिप्, णल्, 'वह्+अ' द्वित्व, 'वह्+वह्+अ', हलादिशेष 'ववह्+अ', "लिट्यभ्यासस्य०"ले संप्रसारण, पूर्वरूप, उपधावृद्धि, 'उवाह' सिद्ध भयो ।

**ऊहतुः–** 'वह्+अतुस्' भएपछि "वचिस्वपि०"ले संप्रसारण, द्वित्व, हलादि शेष, 'उ+उह्+अतुस्' दीर्घ, 'ऊहतुस्', रुत्व, विसर्ग 'ऊहतुः' सिद्ध भयो । यस्तै प्रकारले 'ऊहुः' पनि सिद्ध हुन्छ ।

**उवहिथ/उवोढ–** 'वह्+थ' यज् धातुमा झैं भारद्वाजका मतमा इट् भयो, 'वह्+इथ' द्वित्व, अभ्यासको संप्रसारण 'उवहिथ' सिद्ध भयो । इट् आगम नभएका पक्षमा द्वित्वादि भएर 'उवह्+थ' भएपछि, "होढः"ले ढत्व भयो, 'उवढ्+थ' भयो, भएपछि-

**झषस्तथोरिति–** झष् देखि पर रहेका तकार र थकारका स्थानमा धकार होस्, धा धातुका स्थानमा त नहोस् ।

**ढो ढ इति–** ढकारको लोप होस् ढकार पर भएमा ।

**सहिवहोरिति–** सह् धातु र वह् धातुका अवर्णका स्थानमा ओकार होस् ढकारको लोप भएमा ।

थल्मा 'उवढ्+थ' यहाँ "झषस्तथोः०"ले थकारका स्थानमा धकार भयो, ष्टुत्व भएर ढकार भयो, 'उवढ्+ढ' भयो, "ढो ढे लोपः"ले ढकारको लोप भयो, "सहिवहोरोदवर्णस्य"ले अकारका स्थानमा ओकार भयो, 'उवोढ' सिद्ध भयो ।

**ऊहथुः/ऊह–** अथुस् र अमा ऊहतुःमा जस्तै प्रक्रिया भएर 'ऊहथुः', 'ऊह' यी रूप सिद्ध हुन्छन् ।

ऊहे । वोढा । वक्ष्यति । अवाक्षीत् । अवोढाम् । अवाक्षुः । अवाक्षीः । अवोढम् । अवोढ । अवाक्षम् । अवाक्ष्व । अवाक्ष्म । अवोढ । अवक्षाताम् । अवक्षत । अवोढाः । अवक्षाथाम् । अवोढ्वम् । अवक्षि । अवक्ष्वहि । अवक्ष्महि ॥

**इति भ्वादयः ॥१॥**

---

उत्तमपुरुष णल्मा उवाह/उवह र व, म मा ऊहिव, ऊहिम रूप हुन्छन् ।

**आत्मनेपदमा- ऊहे-** वह् लिट, त, एश्, 'वह्+ए' यहाँ पहिले संप्रसारण अनि द्वित्वादि भएर 'ऊहे' हुन्छ, यस्तै प्रक्रिया भएर ऊहाते ऊहिरे आदि रूप हुन्छन् ।

**लुट् परस्मैपद- वोढा-** 'वह्+तास्+ति' इट् आगमको निषेध, ढत्व, धत्व, ष्टुत्व, 'वढ्+ढास्ति' यहाँ पूर्व ढकारको लोप, ओत्व, डा आदेश, टिलोप, 'वोढा' सिद्ध भयो । यस्तै प्रकारले वोढारौ, वोढारः आदि रूप हुन्छन् । बाँकी रूप- वोढासि, वोढास्थः, वोढास्थ । वोढास्मि वोढस्वः, वोढास्मः हुन्छन् । आत्मनेपदका रूप तल दिइन्छ -

| वह्.लुट्.आ.- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | वोढा | वोढारौ | वोढारः |
| | मध्यमपुरुष | वोढासे | वोढासाथे | वोढाध्वे |
| | उत्तमपुरुष | वोढाहे | वोढास्वहे | वोढास्महे |

**लृट्मा-** वक्ष्यति, वक्ष्यते आदि, **लोट्मा-** वहतु/तात्, वहताम् आदि । **लङ्मा-** अवहत्, अवहत आदि **विधिलिङ्मा-** वहेत्, वहेत आदि । **आशीर्लिङ्मा-** उह्यात्, वक्षीष्ट, आदि रूप परस्मैपद र आत्मनेपदमा क्रमशः हुन्छन् ।

**लुङ् परस्मैपद- अवाक्षीत्-** 'अवह्+स्+ईत्' भएपछि वृद्धि 'अवाह्+स्+ईत्', ढत्व 'अवाढ्+स्+ईत्', कत्व 'अवाक्+स+ईत्', षत्व 'अवाक्+ष्+ईत्' क्षत्व 'अवाक्षीत्' सिद्ध भयो ।

**अवोढाम्-** तस्मा 'अवह्+स्+ताम्' वृद्धि 'अवाह्+स्+ताम्' ढत्व 'अवाढ्+स्+ताम्' सलोप, 'अवाढ्+ताम्', धत्व, 'अवाढ्+धाम्', ष्टुत्व, 'अवाढ्+ढाम्', ढलोप, 'अवा+ढाम्', ओत्व 'अवोढाम्' सिद्ध भयो । यस्तै प्रकारले अरु रूप पनि सिद्ध हुन्छन् ।

**लुङ् आत्मनेपदमा अवोढ-** 'अवह्+स्+त', 'अवढ्+स्+त', सलोप 'अवढ्+त', धत्व, ष्टुत्व, ढलोप, भएपछि 'अवढ' यहाँ वका अकारको ओत्व भयो, 'अवोढ' सिद्ध भयो ।

**लुङ् लकार परस्मैपद र आत्मनेपदका सबै रूप मूलमा नै छन् ।**

**भ्वादि धातुहरू सकिए**

-------------

## अथादादयः

**अद** भक्षणे ॥१॥

**५५१. अदिप्रभृतिभ्यः शपः २।४।७२॥**

लुक् स्यात् । अत्ति । अत्तः । अदन्ति । अत्सि । अत्थः । अत्थ । अद्मि । अद्वः । अद्मः ॥

**५५२. लिटयन्यतरस्याम् २।४।४०॥**

अदो घस्लृ वा स्याल्लिटि । जघास । उपधालोपः ॥

**५५३. शासिवसिघसीनां च ८।३।६०॥**

इण्कुभ्यां परस्यैषां सस्य षः स्यात् ।

---

**अब अदादिगण शुरु हुन्छ**

**अद** धातु खानु अर्थमा छ । अन्त्य अकार उदात्त हो, त्यसको इत्संज्ञा भएर लोप हुन्छ । यो धातु परस्मैपदी हो । (अनिट् सकर्मक )

**अदिप्रभृतिभ्य इति–** अदादिगणपठित धातुदेखि विधान गरिएका शप्को लुक् होस् ।

**अत्ति–** अद् धातुदेखि लट् लकार भयो, लकारका स्थानमा "शेषात्कर्तरि०"ले परस्मैपद एकवचन ति आयो, शप् प्रत्यय भयो, "अदिप्रभृतिभ्यः"ले शप्को लुक् भयो, 'अद्+ति' यहाँ अद्का दकारको चर्त्व, भएर तकार भयो, 'अत्ति' सिद्ध भयो ।

**अत्तः–** अद् लट्, तस्, शप् प्रत्यय, "अदिप्रभृतिभ्यः शपः"ले शप्को लुक्, दकारको चर्त्व, भएर तकार 'अत्तस्' रुत्व, विसर्ग 'अत्तः' सिद्ध भयो ।

**अदन्ति–** अद् धातुदेखि लट् झि, अन्त् आदेश 'अद्+अन्ति' शप्, लुक्, 'अदन्ति' सिद्ध भयो ।

**अत्सि–** अद् लट्, सिप्, शप्, लुक्, चर्त्व, 'अत्सि' सिद्ध भयो ।

**अत्थः, अत्थ–** 'अद्+थस्', शप्, लुक्, चर्त्व, रुत्व, विसर्ग 'अत्थः' सिद्ध भयो । यस्तै प्रकारले 'अत्थ' पनि सिद्ध हुन्छ ।

**अद्मि, अद्वः, अद्मः–** मिप्, वस्, मस्मा पूर्ववत् प्रक्रिया भएर 'अद्मि', 'अद्वः', 'अद्मः' यी रूप सिद्ध हुन्छन् ।

**लिटीति–** अद् धातुका स्थानमा घस्लृ आदेश विकल्पले होस्, लिट् पर भएमा । घस्लृका लृकारको इत्संज्ञा, लोप हुन्छ ।

**जघास–** अद् धातुदेखि लट् लकार आयो, 'अद्+ल्' भयो, "लिट्यन्यतरस्याम्"ले अद्का स्थानमा घस्लृ आदेश भयो, लृकारको इत्संज्ञा, लोप भयो, 'घस्+ल्' भयो, लकारका स्थानमा तिप्, तिप्का स्थानमा णल् भयो, 'घस्+अ' भयो, द्वित्व, हलादिशेष भयो, "कुहोश्चुः"ले चुत्व हुँदा झकार भयो, 'झ+घस्+अ' भयो, "अभ्यासे चर्च"ले जश्त्व भयो, 'जघस्+अ' भयो, "अत उपधायाः"ले वृद्धि भयो, 'जघास' सिद्ध भयो ।

**उपधालोपः–** 'जघस्+अतुस्' भएपछि "गमहनजनखन०"ले घस्का उपधाको लोप हुन्छ ।

**शासीति–** इण् प्रत्याहार र कवर्गदेखि पर रहेका शास्, वस् र घस् धातुका दन्त्य सकारका स्थानमा मूर्धन्य षकार होस् ।

घस्य चर्त्वम् । जक्षतुः । जक्षुः । जघसिथ । जक्षथुः । जक्ष । जघास, जघस । जक्षिव । जक्षिम । आद । आदतुः । आदुः ॥

**५५४. इडत्यर्तिव्ययतीनाम् ७।२।६६॥**

अद् ऋ व्येञ् एभ्यः स्थलो नित्यमिट् स्यात् । आदिथ । अत्ता । अत्स्यति । अत्तु, अत्तात् । अत्ताम् । अदन्तु ॥

**५५५. हुझल्भ्यो हेर्धिः ६।४।१०१॥**

होर्झलन्तेभ्यश्च हेर्धिः स्यात् । अद्धि, अत्तात् । अत्तम् । अत्त । अदानि । अदाव । अदाम ॥

---

**घस्येति**– घकारका स्थानमा चर्त्व भएर ककार हुन्छ ।

**जक्षतुः**– अद् लिट्, घस्‌आदेश, 'घस्+ल्', तस्, अतुस्, 'घस्+अतुस्' द्वित्व, अभ्यासकार्य, 'जघस्+अतुस्' "गमहनजनखन०"ले उपधाको लोप भयो, 'जघ्स्+अतुस्' "शासिवसिघसीनां च"ले सकारका स्थानमा षकार भयो, घकारको "खरि च"ले चर्त्व भयो, 'जक्ष्+अतुस्', ककार र षकार, संयोग भएर क्ष भयो, 'जक्षतुः' सिद्ध भयो । यस्तै प्रकारले जक्षुः आदि रूप हुन्छन् ।

**जघसिथ**– 'घस्+थ' भएपछि "आर्धधातुकस्येड्०"ले पाएको इट् "एकाच उपदेशे"ले निषेध भयो, घस्धातु तासि प्रत्ययमा नहुनाले तासिमा नित्यानिट् वेट् कुनै चर्चा उठेन, अतः "उपदेशेऽत्वतः" लागेन, क्रादिनियमले नित्य इट् भयो, 'घस्+इथ' द्वित्व अभ्यासकार्य भयो, 'जघसिथ' सिद्ध भयो । यस्तै प्रकारले वस्, मस्मा पनि क्रादिनियमले नित्य इट, उपधाको लोप हुन्छ, जक्षिव जक्षिम हुन्छ । अन्यत्र पनि कित् विभक्ति पर भएमा, उपधालोप षत्व, चर्त्व हुन्छ, मिप्‌मा वैकल्पिक वृद्धि हुन्छ, यही विशेषकार्य छ ।

घस्लृआदेश नभएका पक्षमा

**आद**– अद् ल, तिप्, णल्, 'अद्+अ' द्वित्व, अभ्यासकार्य, 'आद' सिद्ध भयो । यस्तै प्रकारले आदतुः, आदुः आदि रूप अत् धातुमा जस्तै जान्नू । थल्‌मा तलको सूत्र लाग्छ ।

**इडत्यर्तीति**– अद्, ऋ, व्येञ् धातुदेखि पर रहेका थल्‌को नित्य इट् आगम होस् ।

**आदिथ**– अद् लिट्, थल्, 'अद्+थ' यहाँ "आर्धधातुक०"ले पाएको थल्‌को इडागम "एकाच उपदेशे०"ले निषेध भएपछि पुनः क्रादिनियमले नित्य इट् पाएकोमा "उपदेशेऽत्वतः"ले निषेध भएपछि "ऋतो भारद्वाजस्य"ले वैकल्पिक इट् आगम पायो, त्यसलाई बाधेर "इडत्यर्तिव्यतीनाम्"ले नित्य इट् आगम भयो, द्वित्व, अभ्यासकार्य भयो, 'आदिथ' सिद्ध भयो । आदिव 'आदिम' यहाँ पनि क्रादिनियमले नित्य इट् आगम हुन्छ ।

**लोट्‌मा- अत्तु/अत्तात्, अत्ताम्** यी तिप् र तस्‌का रूप हुन् । पूर्ववत् प्रक्रिया भएर सिद्ध हुन्छन् । विशेषकार्य छैन ।

**अदन्तु**– झिमा झकारका स्थानमा अन्त आदेश र इकारका स्थानमा उत्व भएर 'अदन्तु' यो रूप हुन्छ ।

**लुट्‌मा**– अत्ता, अत्तारौ, अत्तारः आदि र **लृट्‌मा**– अत्स्यति अत्स्यतः अत्स्यन्ति आदि रूप हुन्छन् ।

**हुझल्भ्य इति**– हु धातुदेखि र झलन्त धातुदेखि पर रहेका हिका स्थानमा धि आदेश होस् ।

**अद्धि/अत्तात्**– अद् धातुदेखि विध्यादि एवं आशीर्वाद अर्थमा लोट् भयो, सिप् भयो, "सेर्ह्यपिच्च"ले हि आदेश 'अद्+हि' शप्, लुक्, विध्यादि अर्थमा हिका स्थानमा तातङ् भएन "हुझल्भ्यो हेर्धिः"ले धिआदेश भयो, 'अद्धि' सिद्ध भयो । आशीर्वाद अर्थमा "तुह्योः०"ले तातङ्-तात् भयो, 'अद्+तात्' चर्त्व भयो, 'अत्तात्' सिद्ध भयो, तातङ् नभएका पक्षमा धि आदेश भयो, 'अद्धि' सिद्ध भयो । संमिलित रूपमा दुवै लोट्‌मा तिप्‌का रूप अद्धि, अत्तात् भए । अरू रूपहरूको

**५५६. अदः सर्वेषाम् ७।३।१००॥**

अदः परस्यापृक्तसार्वधातुकस्य अट् स्यात्सर्वमतेन । आदत् । आत्ताम् । आदन् । आदः । आत्तम् । आत्त । आदम् । आद्व । आद्म । अद्यात् । अद्याताम् । अद्युः । अद्यात् । अद्यास्ताम् । अद्यासुः ॥

**५५७. लुङ्सनोर्घस्लृ २।४।३७॥**

अदो घस्लृ स्याल्लुङि सनि । च । लृदित्त्वादङ् । अघसत् ।

---

सिद्धिमा पनि विशेष प्रक्रिया छैन । लोट्का सबै रूप तल दिइन्छ ।

| अद् लोट्- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अत्तु/अत्तात् | अत्ताम् | अदन्तु |
| | मध्यमपुरुष | अद्धि/अत्तात् | अत्तम् | अत्त |
| | उत्तमपुरुष | अदानि | अदाव | अदाम |

**अद इति**– अद् धातुदेखि पर रहेको अपृक्त सार्वधातुकसंज्ञक प्रत्ययको अट् आगम होस्, सबैको मतमा ।

**आदत्**– अद् धातुदेखि लङ्, आट्, वृद्धि, तिप्, शप्, लुक् भयो, 'आद्+ति', तिका इकारको लोप, 'आद्+त्' भएपछि "अदः सर्वेषाम्"ले त्को अट्आगम भयो, 'आदत्' सिद्ध भयो ।

**आत्ताम्, आदन्**- यहाँ विशेष कार्य छैन ।

**आदः**– सिप्मा 'आद्+स्' भएपछि पूर्वसूत्रले अट् आगम, आदस् भयो, रुत्व, विसर्ग भयो, 'आदः' सिद्ध भयो । **आत्तम्, आत्त**- यहाँ पनि केही विशेष कार्य छैन । मिप्, वस्, मस्मा **आदम्, आद्व, आद्म** यी रूप हुन्छन् ।

**विधिलिङ्मा**– सार्वधातुक लिङ् हुनाले यासुट्का सकारको लोप हुन्छ । आशीर्लिङ्मा सकारको लोप हुँदैन । तिप् र सिप्मा विधिलिङ् र आशीर्लिङ्का समान रूप हुन्छन् । आशीर्लिङ्मा "स्कोः संयोगाद्योः०"ले संयोगादि सकारको लोप हुन्छ ।

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| अद् विधिलिङ्- | प्रथमपुरुष | अद्यात् | अद्याताम् | अद्युः |
| | मध्यमपुरुष | अद्याः | अद्यातम् | अद्यात |
| | उत्तमपुरुष | अद्याम् | अद्याव | अद्याम |

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| अद् आशीर्लिङ्- | प्रथमपुरुष | अद्यात् | अद्यास्ताम् | अद्यासुः |
| | मध्यमपुरुष | अद्याः | अद्यास्तम् | अद्यास्त |
| | उत्तमपुरुष | अद्यासम् | अद्यास्व | अद्यास्म |

**लुङ्सनोरिति**– अद् धातुका स्थानमा घस्लृ आदेश होस्, लुङ् र सन् परभएमा । लृकारको इत्संज्ञा भएकोले च्लिका स्थानमा अङ् हुन्छ ।

**अघसत्**– अद् धातुदेखि लुङ् लकार भयो घस्लृ आदेश भयो लृकारको इत्संज्ञा लोप भयो अट् आगम भयो, 'अघस्+ल्', तिप्, च्लि "पुषादिद्युताद्य०"ले च्लिका स्थानमा अङ् भयो, 'अघस्+अ+ति' तिका इकारको लोप 'अघसत्' सिद्ध भयो । यस्तै प्रकारले अघसताम्, अघसन् आदि रूप हुन्छन् ।

आत्स्यत् ॥ **हन** हिंसागत्योः ॥२॥ हन्ति ॥

**५५८. अनुदात्तोपदेशवनतितनोत्यादीनामनुनासिकलोपो झलि क्ङिति ६।४।३७।**

अनुनासिकान्तानामेषां वनतेश्च लोपः स्याज्झलादौ किति ङिति परे । यमि-रमि-नमि-गमि-हनि-मन्यतयोऽनुदात्तोपदेशाः । तनु-क्षणु-क्षिणु-ऋणु-तृणु-घृणु-वनु-मनु एते तनोत्यादयः । हतः । घ्नन्ति । हंसि । हथः । हथ । हन्मि । हन्वः । हन्मः । जघान । जघ्नतुः । जघ्नुः ।

---

| घस् लुङ्- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अघसत् | अघसताम् | अघसन् |
| | मध्यमपुरुष | अघसः | अघसतम् | अघसत |
| | उत्तमपुरुष | अघसम् | अघसाव | अघसाम |

**आत्स्यत्**– अद् लृङ्, आट्, वृद्धि, तिप्, स्य प्रत्यय, इट् आगमको निषेध, इकारलोप भयो, 'आत्स्यत्' सिद्ध भयो । यस्तै प्रकारले आत्स्यताम्, आत्स्यन् आदि रूप सिद्ध हुन्छन् ।

**हन** धातु हिंसा र गति अर्थमा छ । अकार उदात्त हो इत्संज्ञा भएर लोप हुन्छ । यो धातु परस्मैपदी हो । (अनिट् सकर्मक )

**हन्ति**– हन् लट्, तिप्, शप्, लुक्, 'हन्+ति' हन्‌का नकारको "नश्चापदान्तस्य झलि"ले अनुस्वार, "अनुस्वारस्य ययि परसवर्णः"ले परसवर्ण भयो, 'हन्ति' सिद्ध भयो ।

**अनुदात्तेति**– अनुनासिक अन्तमा हुने, अनुदात्तोपदेश धातु, तनोत्यादि धातुको र वन धातुको पनि अन्त्य अल्‌को लोप होस्, झल् आदिमा हुने कित्-ङित् प्रत्यय पर भएमा ।

**यमीति**– यम्, रम्, नम्, गम्, हन्, मन् यी अनुदात्तोपदेश धातु हुन् ।

**तन्विति**– तनु, क्षणु, क्षिणु, ऋणु, तृणु, घृणु, वनु, मनु यी आठ धातु तनोत्यादि धातु हुन् । वन धातु भ्वादिको हो । यो तनादिको वनु धातुदेखि भिन्न धातु हो ।

**हतः**– हन् लट्, तस्, 'हन्+तस्' यहाँ "अनुदात्तोपदेश०"ले अनुदात्तोपदेश हन् धातु हुनाले हन्‌का नकारको लोप भयो, 'हतस्', रुत्व, विसर्ग भयो, 'हतः' सिद्ध भयो ।

**घ्नन्ति**– हन् लट्, झि, अन्त् आदेश 'हन्+अन्ति', शप्, लुक्, "गमहनजनखन०"ले उपधाको लोप, 'ह्न्+अन्ति' भएपछि, "हो हन्तेर्ञ्णिन्नेषु"ले नकार पर हुनाले हकारका स्थानमा कवर्ग हुँदा आन्तरतम्याद् घकार भयो, 'घ्नन्ति' सिद्ध भयो ।

**हंसि**– हन् लट्, सि, शप्, लुक् 'हन्+सि' यहाँ "नश्चापदान्तस्य०"ले अनुस्वार भयो 'हंसि' सिद्ध भयो ।

**हथः, हथ**– थस् र थमा अनुदात्तोपदेशले नकारको लोप भएपछि, हथः, हथ यी रूप सिद्ध हुन्छन् ।

**हन्मि, हन्वः, हन्मः**– यी तिनै स्थलमा झल पर नहुनाले अनुस्वार भएन हन्मि, हन्वः, हन्मः यी रूप सिद्ध भए ।

**जघान**– हन् लिट्, तिप्, णल्, 'हन्+अ' द्वित्व, 'हन्+हन्+अ' हलादिशेष 'हहन्+अ', कुत्व 'झहन्+अ', जश्त्व 'जहन्+अ' वृद्धि 'जहान्+अ', "हो हन्तेः०"ले कुत्व, 'जघान' सिद्ध भयो ।

**जघ्नतुः, जघ्नुः**– हन् लिट्, तस्, अतुस्, 'द्वित्वादि' 'जहन्+अतुस्', "गमहनजजखन०"ले उपधालोप'जह्न्+अतुस्' "हो हन्तेः०"ले कुत्व भयो, रुत्व,विसर्ग भयो, 'जघ्नतुः' सिद्ध भयो । यस्तै प्रकारले 'जघ्नुः' सिद्ध हुन्छ ।

**५५९. अभ्यासाच्च ७।३।५५॥**

अभ्यासात्परस्य हन्तेर्हस्य कुत्वं स्यात्। जघनिथ, जघन्थ। जघ्नथुः। जघ्न। जघान, जघन। जघ्निव। जघ्निम। हन्ता। हनिष्यति। हन्तु, हतात्। हताम्। घ्नन्तु॥

**५६०. हन्तेर्जः ६।४।३६॥**

हौ परे॥

**५६१. असिद्धवदत्राभात् ६।४।२२॥**

इत ऊर्ध्वमापादसमाप्तेराभीयम्, समानाश्रये तस्मिन्कर्तव्ये तदसिद्धम्। इति जस्यासिद्धत्वान्न हेर्लुक्। जहि, हतात्। हतम्। हत। हनानि। हनाव। हनाम।

---

**अभ्यासादिति**– अभ्यासदेखि पर रहेका हन् धातुका हकारका स्थानमा कुत्व होस्।

**जघनिथ/जघन्थ**– थल्मा तासि प्रत्ययमा नित्यानिट् अकारवान् धातु हुनाले भारद्वाजनियमले वैकल्पिक इट् आगम भयो, द्वित्व अभ्यासकार्य भयो, 'जहन्+इथ' भयो, "अभ्यासाच्च"ले अभ्यासदेखि पर रहेका हकारको कुत्व भयो, 'जघनिथ' सिद्ध भयो। इट् नभएको पक्षमा द्वित्व अभ्यासकार्य भएपछि, 'जहन्+थ' यहाँ उक्त सूत्र (अभ्यासाच्च)ले हकारको कुत्व भएर घकार भयो, अनुस्वार परसवर्ण भयो, 'जघन्थ' सिद्ध भयो।

अथुस् र अमा अतुस्मा जस्तै उपधालोप र कुत्व हुन्छ, जघ्नथुः, जघ्न यी रूप हुन्छन्। उत्तम पुरुष णल्मा जघान, जघन यी रूप हुन्छन्।

**जघ्निव, जघ्निम**– व, म मा क्रादिनियमले नित्य इट् उपधालोप कुत्व हुन्छ।

**हन्ता**– लुट्मा तासि प्रत्ययको इट् आगम पाएमा "एकाच उपदेश०"ले निषेध हुन्छ।

**हनिष्यति**– हन् धातुदेखि लृट् लकार आयो, तिप्, 'हन्+ति' स्य प्रत्यय, 'हन्+स्यति' यहाँ "आर्धधातुक०"ले पाएको इट् आगम "एकाच०"ले निषेध भएपछि, "ऋद्धनोः स्ये"ले इट् आगम भयो, षत्व, भयो, 'हनिष्यति' सिद्ध भयो। यस्तै प्रकारले अरू विभक्तिमा पनि रूप सिद्ध गर्नू।

**हन्तु**– विध्यादि अर्थमा पूर्ववत् 'हन्तु' सिद्ध भयो। आशीः अर्थमा हन्तु भएपछि तुका स्थानमा तात् भयो, तातङ्मा ङित्त्व हुनाले "अनुदात्तोपदेश०"ले नकारको लोप भयो, 'हतात्' सिद्ध भयो, तातङ् नभएका पक्षमा 'हन्तु' सिद्ध भयो। सम्मिलित रूपमा हन्तु, हतात् यी दुई रूप भए।

**हताम्**– तस्मा 'हन् तस्', ताम् 'हन्+ताम्' नलोप भयो, 'हताम्' सिद्ध भयो।

**घ्नन्तु**– 'हन्+अन्तु', उपधालोप, **कुत्व** भयो, 'घ्नन्तु' सिद्ध भयो।

**हन्तेरिति**– हन्धातुका स्थानमा ज आदेश होस् हि परभएमा।

**असिद्धेति**– "असिद्धवदत्राभात्" यस सूत्रदेखि माथि (अर्थात् ६।४।२२ सूत्रदेखि पर) पाउ समाप्ति नहुन्जेलसम्म आभीय सूत्र कहिन्छ। समान आश्रय भएका आभीय कार्य गर्दा कृतकार्य आभीय सूत्र (शास्त्र) असिद्ध हुन्छ।

**जहि/हतात्**– विध्यादि अर्थमा 'हन्+हि' भएपछि "हन्तेर्जः"ले हन्का स्थानमा ज आदेश भयो, जहि भएपछि "अतो हेः"ले हिको लुक् पाएमा ६।४।२२देखि माथिको सूत्र "हन्तेर्जः" ६।४।३६ले गरेको ज आदेश, समानाश्रय लुक् गर्ने सूत्र "अतो हेः" ६।४।१०५ का दृष्टिमा "असिद्धवदत्राभात्" लाएर असिद्ध भयो र लुक् भएन 'जहि' सिद्ध भयो। आशीर्वाद अर्थमा 'हन्+हि' यहाँ हिका स्थानमा वैकल्पिक तात् भयो, अनुनासिक लोप भयो, 'हतात्' सिद्ध भयो। तातङ् नभएका पक्षमा पूर्ववत् 'जहि' सिद्ध भयो। सम्मिलित रूप जहि/हतात् दुई रूप भए।

**हनानि, हनाव, हनाम**– हन् लोट्, मिप्, नि, शप्, लुक्, आट् आगम भयो, 'हनानि' सिद्ध भयो। यस्तै प्रकारले हनाव, हनाम यी रूप पनि हुन्छन्।

---

अहन् । अहताम् । अघ्नन् । अहन् । अहतम् । अहत । अहनम् । अहन्व । अहन्म । हन्यात् । हन्याताम् । हन्युः ॥

**५६२. आर्धधातुके २।४।३५॥**

इत्यधिकृत्य ॥

**५६३. हनो वध लिङि २।४।४२**

**५६४. लुङि च २।४।४३॥**

वधादेशोऽदन्तः । आर्धधातुके इति विषयसप्तमी ।

---

**अहन्**– हन लङ्, अट्, ति, शप्, लुक्, 'अहन्+ति', तिका इकारको इतश्चले लोप, तकारको "हल्ङ्याब्भ्यो०"ले लोप भयो, 'अहन्' सिद्ध भयो । अहन् यो प्रातिपदिक हैन । "न लोपः प्रातिपदिकान्तस्य" लाग्दैन ।

**अहताम्**– हन् लङ्, अट् आगम, तस्, ताम् आदेश, शप्, लुक्, भयो, 'अहन्+ताम्' यहाँ "अनुदात्तोपदेश०"ले अनुनासिकलोप भयो, 'अहताम्' सिद्ध भयो । तम् र तमा पनि अनुनासिकलोप हुन्छ ।

**अघ्नन्**– 'अहन्+अन्ति', उपधालोप, 'अह्न्+अन्ति', कुत्व 'अघ्नन्ति', तिका इकारको लोप, तकारको संयोगान्तलोप भयो, 'अघ्नन्' सिद्ध भयो ।

**अहन्**– 'अहन्+सि', 'अहन्+स्' सकारको "हल्ङ्याब्भ्यो०"ले लोप 'अहन्' सिद्ध भयो । यसरी तिप् र सिप्मा तुल्याकार रूप भए । मिप्मा अहनम्, वस्, मस्मा, अहन्व, अहन्म यी रूप हुन्छन् । लङ् लकारका सबै रूप-

| हन् लङ्- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अहन् | अहताम् | अघ्नन् |
| | मध्यमपुरुष | अहन् | अहतम् | अहत |
| | उत्तमपुरुष | अहनम् | अहन्व | अहन्म |

**हन्यात्**– विधिलिङ्मा 'हन्+यास्+ति' यहाँ, "लिङः सलोपो०"ले सकारको लोप, "इतश्च"ले तिका इकारको लोप भयो, 'हन्यात्' सिद्ध भयो । अदादिमा शप्को लुक् हुने हुनाले अकारान्त अङ्ग हुँदैन, अतः "अतो येयः" लाग्दैन । तस्मा हन्याताम्, झिमा, झेर्जुस्ले जुस् हुन्छ, हन्युः इत्यादि पूर्वप्रक्रिया अनुसार रूप हुन्छन् ।

| हन् वि.लि.- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | हन्यात् | हन्याताम् | हन्युः |
| | मध्यमपुरुष | हन्याः | हन्यातम् | हन्यात |
| | उत्तमपुरुष | हन्याम् | हन्याव | हन्याम |

**"सङ्करस्य च कर्ता स्यामुपहन्यामिमाः प्रजाः"** । (भगवद्गीता)

यहाँ दुवै ठाउँमा "हेतुहेतुमतोर्लिङ्"ले लिङ्लकार भएको छ ॥

**आर्धधातुक इति**– "आर्धधातुके" यो पदको अधिकार गरेर ।

**हन इति**– हन् धातुका स्थानमा वध आदेश होस् आर्धधातुक लिङ्को विषयमा ।

**लुङि चेति**– हन् धातुका स्थानमा वध आदेश होस् लुङ्को विषयमा ।

**वधादेश इति**– वध आदेश ह्रस्व अकारान्त छ । "आर्धधातुके" यो विषयमा विधान

तेन आर्धधातुकोपदेशे अकारान्तत्वादतो लोपः। वध्यात्। वध्यास्ताम्। आदेशस्यानेकाच्त्वादेकाच इतीणिनिषेधाभावादिट्। "अतो हलादेः०" इति वृद्धौ प्राप्तायाम्–

**५६५. अचः परस्मिन् पूर्वविधौ १।१।५७॥**

परनिमित्तोऽजादेशः स्थानिवत्, स्थानिभूतादचः पूर्वत्वेन दृष्टस्य विधौ कर्तव्ये। इत्यल्लोपस्य स्थानिवत्त्वान्न वृद्धिः। अवधीत्। अहनिष्यत्॥ **यु** मिश्रणामिश्रणयोः॥३॥

**५६६. उतो वृद्धिर्लुकि हलि ७।३।८९॥**

लुग्विषये उतो वृद्धिः पिति हलादौ सार्वधातुके न त्वभ्यस्तस्य।

---

गरिएको सप्तम्यन्त पद हो।

**तेनेति**–त्यसकारणले आर्धधातुक संज्ञक प्रत्ययको उपदेशमा 'वध' यो अकारान्त आदेश भएको हुनाले अकार ले "अतो लोपः"ले लोप हुन्छ।

**वध्यात्**– लुङ् लकार ल्याउनु छ भन्दामा हन् धातुका स्थानमा "हनो वध लिङि"ले वध आदेश भयो, वध धातुदेखि लिङ् आयो, तिप्, यासुट् आगम भयो, 'वध+यास्+ति' भएपछि, "अतो लोपः"ले वधका अकारको लोप भयो, 'वध्+यास्ति' यहाँ तिका इकारको लोप, 'वध्यास्त्' सकारको "स्कोः संयोगाद्योः०"ले लोप भयो, 'वध्यात्' सिद्ध भयो। यस्तै प्रकारले वध्यास्ताम्, वध्यासुः आदि रूप पनि सिद्ध हुन्छन्।

**अवधीत्**– लुङ् लकार ल्याउनु छ भन्दामा हन् धातुका स्थानमा "लुङि च"ले वध आदेश भयो, वध धातुदेखि लुङ् आयो, अट्आगम भयो, 'अवध+ल्' लकारका स्थानमा ति, च्लि, सिच, सिचको इट् आगम, 'अवध+इस्+ति' तिका इकारको "इतश्च"ले लोप भयो, "अस्तिसिचोऽपृक्ते"ले इट् आगम भयो, 'अवध+इस्+ईत्' भयो, अवधका अन्त्य अकारको "अतो लोपः"ले लोप भयो, 'अवध्+इस्+ईत्', "वदव्रज०"ले पाएको वृद्धि, "नेटि"ले निषेध भयो, "अतो हलादेः०"ले वैकल्पिक वृद्धि पाएमा "अचः परस्मिन् पूर्वविधौ"ले अकारको लोपको स्थानिवद्भाव भएर अकारान्त नै भयो, उपधामा ह्रस्व अकार नहुनाले वृद्धि भएन, सकारको लोप भयो, "सिज्लोप एकादेशे०" लगाएर "अकः सवर्णे"ले दीर्घ भयो, 'अवधीत्' सिद्ध भयो।

**अवधिष्टाम्**– तस्मा ताम् आदेश पूर्ववत्, 'अवध+इस्+ताम्' भएपछि, अकारको लोप भयो, अकारको लोप स्थानिवद्भाव भएकोले वृद्धि भएन, षत्व, ष्टुत्व, भयो, 'अवधिष्टाम्' सिद्ध भयो। यस्तै प्रकारले अवधिषुः आदि रूप पनि हुन्छन्। सबै रूप तल दिइन्छ।

| हन् लुङ् | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अवधीत् | अवधिष्टाम् | अवधिषुः |
| | मध्यमपुरुष | अवधीः | अवधिष्टम् | अवधिष्ट |
| | उत्तमपुरुष | अवधिषम् | अवधिष्व | अवधिष्व |

**अहनिष्यत्**– लृङ्लकारमा "ऋद्धनोःस्ये"ले इट् आगम, षत्व, इकारलोप भएर 'अहनिष्यत्' सिद्ध हुन्छ। यस्तै प्रकारले अरू रूप पनि सिद्ध गर्नू।

**यु** धातु मिसाउनु र छुटाउनु अर्थमा छ। यो धातु परस्मैपदी हो।(सेट् सकर्मक)

**उतो वृद्धिरिति**– लुक्का विषयमा धातुका उकारका स्थानमा वृद्धि होस्, हलादिमा हुने पित्सार्वधातुक प्रत्यय परभएमा, अभ्यस्त संज्ञक धातुका उकारका स्थानमा त वृद्धि नहोस्। "नाभ्यस्तस्याचि पिति सार्वधातुके ७।३।८७" बाट न, अभ्यस्तस्य, पिति, यी तीन पदको अनुवृत्ति आउँछ। तिप्, सिप् र मिप्मा यो सूत्रले वृद्धि हुन्छ। अरू विभक्ति पित् नहुनाले यो सूत्रले वृद्धि

यौति । युतः युवन्ति । यौषि । युथः । युथ । यौमि । युवः । युमः । युयाव । यविता । यविष्यति । यौतु, युतात् । अयौत् । अयुताम् । अयुवन् । युयात् । इह उतो वृद्धिर्न,

---

पाउँदैन, "सार्वधातुकार्धधातुकयोः"ले पाएको गुण "क्ङितिच"ले निषेध हुन्छ ।

**यौति**– यु धातुदेखि लट्, तिप्, शप्, लुक् 'यु+ति' यहाँ "उतो वृद्धिः०"ले युको उकारका स्थानमा वृद्धि हुँदा आन्तरतम्यात् औकार भयो, 'यौति' सिद्ध भयो ।

**युतः**– यु धातदेखि लट् तस्, शप्, लुक्, 'यु+तस्' यहाँ सार्वधातुकार्ध०"ले पाएको गुण तस् ङित् हुनाले "क्ङिति च" ले निषेध भयो रुत्व, विसर्ग भयो, 'युतः' सिद्ध भयो ।

**युवन्ति**– पूर्ववत् 'यु+अन्ति' भएपछि "सार्वधातुका०"ले पाएको गुणको निषेध भयो, "अचिश्नुधातु०"ले उवङ् आदेश भयो, 'युवन्ति' सिद्ध भयो ।

**यौषि**– यु लट्, सिप्, शप्, लुक्, "उतोवृद्धि०"ले वृद्धि, षत्व, 'यौषि' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध हुन्छन् ।

**युयाव**– यु धातुदेखि लिट्, तिप्, णल्, द्वित्व, 'युयु+अ' वृद्धि, 'युयाव' सिद्ध भयो ।

**युयुवतुः**– तस्मा अतुस्, द्वित्व, ङित्वात् गुणनिषेध, उवङ्, 'युयुवतुः' सिद्ध भयो । यस्तै प्रकारले 'युयुवुः' सिद्ध हुन्छ ।

**युयविथ**– थल्मा 'यु+थ' यहाँ आर्धधातुकस्येड्०"ले इट् भयो, 'यु धातु उदात्त हुनाले "एकाच उपदेशे०" लागेन, यो सूत्र नलागे पछि अरू सूत्र पनि लागेनन्, द्वित्व अभ्यासकार्य भयो, 'युयु+इथ', यहाँ हलादि प्रत्यय पर नहुनाले "उतो वृद्धि०" लागेन, गुण, अव् आदेश भयो, 'युयविथ' सिद्ध भयो ।

| यु.लिट्– | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | युयाव | युयुवतुः | युयुवः |
| | मध्यमपुरुष | युयविथ | युयुवथुः | युयुव |
| | उत्तमपुरुष | युयाव-युयव | युयुविव | युयुविम |

**यविता, यविष्यति**– लुट्, लृट्मा इट् आगम गुण अवादेश हुन्छ र यविता यविष्यति आदि रूप सिद्ध हुन्छन् ।

**यौतु/युतात्**– लोट्मा हि र तातङ् हुनाले वृद्धि निषेध हुन्छ । गुण निषेध भएपछि उवङ् हुन्छ । उत्तमपुरुषमा आट् आगम पित् हुनाले गुण हुन्छ । हलादि नहुनाले "उतो वृद्धि०"ले वृद्धि हुँदैन । विधिलोट् एवं आशीर्लोटका संयुक्त रूप तल दिइन्छ-

| यु.लोट्– | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | यौतु/युतात् | युताम् | युवन्तु |
| | मध्यमपुरुष | युहि/युतात् | युतम् | युत |
| | उत्तमपुरुष | यवानि | यवाव | यवाम |

**युयात्**– यु धातुदेखि विधिलिङ् तिप्, शप्, लुक्, यासुट्, तिका इकारको इतश्चले लोप भयो, 'यु+यास्+त्', सलोप 'यु+यात्' भएपछि "उतो वृद्धि०"ले वृद्धि पाएकोमा भाष्यमा "पिच्च ङिन्न ङिच्च पिन्न" (पित् ङित् हुँदैन, ङित् पित् हुँदैन) भनेकोले यासुट्मा पित्त्व आएन र वृद्धि भएन, 'युयात्' सिद्ध भयो । यही कुरा "इह उत" आदि तलको पङ्क्तिमा स्पष्ट गरेको छ ।

**इह उत इति**– यहाँ उकारका स्थानमा वृद्धि हुँदैन । भाष्यमा "ङिच्च पिन्न पिच्च ङिन्न" भनेर व्याख्यान गरिएको छ । यस पङ्क्तिको आशय हो । यहाँ तिप्को तकारमा पित्त्व छ,

भाष्ये- 'पिच्च ङिन्न ङिच्च पिन्न' इति व्याख्यानात् । युयाताम् । युयुः । यूयात् । युयास्ताम् । यूयासुः । अयावीत् । अयविष्यत् ॥ **या** प्रपणे ॥४॥ याति । यातः । यान्ति । ययौ ।

---

"यदागमस्तद्गुणीभूतः०" यो परिभाषा लगाएर त्यसको आगम यासुट्मा पित्त्व आएपछि यासुट् पनि पित् हुने भयो । पुनः "यासुट् परस्मैपदेषूदात्तो ङिच्च"ले यासुट् ङित् होस् भनेको छ र ङित्त्व पनि यासुट्मा छ अतः यासुट् पित् पनि ङित्, पनि छ । पित् मानेर "उतो वृद्धि"ले वृद्धि हुनुपर्ने हो तर हुँदैन । किनकि भाष्यमा ङित् पित् हुँदैन, पित्, ङित् हुँदैन भनिएको छ । यो भनाइको आशयबाट यासुट् पित् हुन सकेन । अव्यवहित पर यासुट् नै छ, यासुट् ङित् नै भयो, पित् पर नभएकोले युका उकारका स्थानमा वृद्धि भएन । विधिलिङ्मा सार्वधातुक प्रत्यय पर हुनाले "अकृत्सार्वधातुकयोः"ले दीर्घ पनि हुँदैन ।

| **यु वि.लि.-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | युयात् | युयाताम् | युयुः |
| | मध्यमपुरुष | युयाः | युयातम् | युयात |
| | उत्तमपुरुष | युयाम् | युयाव | युयाम |

**यूयात्**– यु धातुदेखि आशीर्वाद अर्थमा लिङ्, तिप्, यासुट्, "अकृत्सार्वधातुकयोः०"ले दीर्घ भयो, 'यूयास्+ति' तिका इकारको "इतश्च"ले लोप सकारको संयोगादिलोप भयो, 'यूयात्' सिद्ध भयो ।

| **यु आ.लि.-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | यूयात् | यूयास्ताम् | यूयासुः |
| | मध्यमपुरुष | यूयाः | यूयास्तम् | यूयास्त |
| | उत्तमपुरुष | यूयासम् | यूयास्व | यूयास्म |

**अयावीत्**– युधातुदेखि लुङ्, 'अयु+ल्' तिप्, च्लि, सिच्, इट्, 'अयु+इस्+ति', "सिचि वृद्धिः०"ले वृद्धि आव् आदेश 'अयावीस्+ति' तिका इकारको लोप, ईट्आगम, सिच्लोप, दीर्घ, 'अयावीत्' सिद्ध भयो ।

| | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| **यु लुङ्-** | प्रथमपुरुष | अयावीत् | अयाविष्टाम् | अयाविषुः |
| | मध्यमपुरुष | अयावीः | अयाविष्टम् | अयाविष्ट |
| | उत्तमपुरुष | अयाविषम् | अयाविष्व | अयाविष्म |
| **यु लृङ्-** | प्रथमपुरुष | अयविष्यत् | अयविष्यताम् | अयविष्यन् |
| | मध्यमपुरुष | अयविष्यः | अयविष्यतम् | अयविष्यत |
| | उत्तमपुरुष | अयविष्यम् | अयविष्याव | अयविष्याम |

**या** धातु हिड्नु अर्थमा छ । (अनिट्, अर्थ अनुसार सकर्मक र अकर्मक)

**याति**– या लट्, तिप्, शप्, लुक्, 'याति' सिद्ध भयो ।

**यातः**– 'या+तस्', शप्, लुक्, रुत्व, विसर्ग, 'यातः' सिद्ध भयो ।

**यान्ति**– 'या+अन्ति', शप्, लुक्, "अकः सवर्णे०"ले दीर्घ, 'यान्ति' सिद्ध भयो । यस्तै प्रकारले अरू रूपहरू सिद्ध गर्नू ।

**ययौ**– या लिट्, तिप्, णल्, 'या+अ' "आत औ णलः"ले अका स्थानमा औकारादेश 'या+औ', द्वित्व, 'याया+औ', अभ्यासकार्य, 'यया+औ', वृद्धि भयो, 'ययौ' सिद्ध भयो । थल्मा

याता । यास्यति । यातु । अयात् । आयाताम् ॥

**५६७. लङः शाकटायनस्यैव ३।४।१११॥**

आदन्तात्परस्य लङो झेर्जुस् वा स्यात् । अयुः, अयान् । यायात् । यायाताम् । यायुः । यायात् । यायास्ताम् । यायासुः । अयासीत् । अयास्यत् ॥ **वा** गतिगन्धनयोः ॥५॥ **भा** दीप्तौ ॥६॥ **ष्णा** शौचे ॥७॥ **श्रा** पाके ॥८॥ **द्रा** कुत्सायां गतौ ॥९॥ **प्सा** भक्षणे ॥१०॥रा दाने ॥११॥ **ला** आदाने ॥१२॥ **दाप्** लवने ॥१३॥ **पा** रक्षणे ॥१४॥ **ख्या** प्रकथने ॥१५॥ अयं सार्वधातुक एव प्रयोक्तव्यः ॥

---

ययिथ/ययाथ, व, ममा, ययिव, ययिम हुन्छ । अरू रूप आफै ऊह गर्नू ।

**याता-** या लुट्, तिप्, तासि प्रत्यय, 'यातास्+ति', यहाँ तासिको इट्निषेध, डा आदेश, टिलोप, 'याता' सिद्ध भयो । यस्तै प्रकारले यातारौ, यातारः आदि रूप जान्नु ।

**लृट्मा-** यास्यति आदि, **लोट्मा-** यातु-यातात् आदि रूप हुन्छन् ।, **लङ्माः-** तिप् र तस्मा अयात्, अयाताम् यी दुई रूप हुन्छन् ।

**लङ इति-** आकारान्त धातुदेखि पर रहेका लङ्सम्बन्धी झिका स्थानमा विकल्पले जुस् होस् ।

**अयुः/अयान्-** या धातुदेखि लङ्, अट् आगम, लकारका स्थानमा झि आदेश, 'अया+झि' शप्, लुक्, "झोऽन्तः"लाई बाधेर "लङः शाकटायनस्य"ले वैकल्पिक जुस् भयो, 'अया+उस्' "उस्यपदान्तात्"ले पररूप भयो, 'अयुः' सिद्ध भयो । जुस् नभएको पक्षमा "झोऽन्तः"ले झिको अन्त् आदेश दीर्घ भयो, 'अयान्ति', तिका इकारको 'इतश्च'ले लोप तकारको संयोगान्त लोप भयो, 'अयान्' सिद्ध भयो । यसरी दुई रूप भए ।

**विधिलिङ्मा-** सार्वधातुक लिङ् हुनाले यासुट्का सकारको लोप हुन्छ । यायात्, यायाताम्, यायुः, आदि रूप हुन्छन् ।, **आशीर्लिङ्मा-** आशीर्लिङ् आर्धधातुक हुनाले सकारको लोप हुँदैन । यायात् यायास्ताम्, यायासुः आदि रूप हुन्छन् ।

**अयासीत्-** या, लुङ्, अट्, तिप्, च्लि, सिच्, इट् आगमको निषेध भयो, 'अयास्+ति' "यमरमनमातां सक् च"ले धातुको सक् आगम र सिच्को इट् आगम 'अयास्+इस्+ति' तिका इकारको लोप, ईट् आगम 'अयास्+इस्+ईत्', "इट ईटि"ले सिच्को लोप, दीर्घ भयो, 'अयासीत्' सिद्ध भयो । यस्तै प्रकारले तस्, झि आदि विभक्तिमा अयासिष्टाम्, अयासिषुः । आदि रूप पनि हुन्छन् ।

**लृङ्-** लृङ्मा केही विशेष कार्य छैन । अयास्यत् आदि रूप हुन्छन् । अव वा धातुदेखि ख्या धातु सम्मका १० धातुका रूपहरू या धातुका जस्तै हुन्छन् । तर स्ना, श्रा, द्रा, प्सा र व्या यी धातुका आशीर्लिङ्मा "वान्यस्य संयोगादेः"ले वैकल्पिक एत्व हुने हुँदा एत्व भएका पक्षमा फरक रूप हुन्छन् ।

**वा** धातु [८१] हिंड्नु र सूचना गर्नु अर्थमा छ । भा धातु प्रकाशित हुनु अर्थमा छ । ष्णा (स्ना) धातु शुद्ध हुनु (नुहाउनु) अर्थमा छ । **श्रा** धातु पकाउनु अर्थमा छ । द्रा धातु नराम्रोसँग हिंड्नु अर्थमा छ । **प्सा** धातु खानु अर्थमा छ । राधातु दिनु अर्थमा छ । ला धातु लिनु अर्थमा छ । दाप् धातु काट्नु अर्थमा छ । पकारको इत्संज्ञा हुन्छ । पा धातु रक्षा गर्नु अर्थमा छ । **ख्या** धातु भन्नु अर्थमा छ । यो ख्या धातु सार्वधातुक लकारमा मात्र प्रयोग गर्न योग्य छ । यी सबै परस्मैपदी हुन् । (यी सबै धातु अनिट् हुन् । सकर्मक, अकर्मक अर्थ अनुसार ऊह गर्नू )

यी धातुहरूका रूपको दिग्दर्शनार्थ सबै लकारका शुरूका एक एक रूप मात्र दिइन्छ ।

---

८१ यहाँ हिंड्नु भनेको हावाको गति हो ।

**विद** ज्ञाने ॥१६॥

**५६८. विदो लटो वा ३।४।८३॥**

वेत्तेर्लटः परस्मैपदानां णलादयो वा स्युः । वेद ।

विदतुः । विदुः । वेत्थ । विदथुः । विद । वेद । विद्व । विद्म । पक्षे– वेत्ति । वित्तः । विदन्ति ॥

---

**वा**– वाति । ववौ । वाता । वास्यति । वातु/तात् । अवात् । वायात् । वायात् । अवासीत् । अवास्यत् ।

**भा**– भाति । बभौ । भाता । भास्यति । भातु/तात् । अभात् । भायात् । भायात् । अभासीत् । अभास्यत् ।

**स्ना**– स्नाति । सस्नौ । स्नाता । स्नास्यति । स्नातु/तात् । अस्नात् । स्नायात् । स्नेयात्/स्नायात् । अस्नासीत् । अस्नास्यत् ।

**श्रा**– श्राति । शश्रौ । श्राता । श्रास्यति । श्रातु/तात् । अश्रात् । श्रायात् । श्रेयात्/श्रायात् । अश्रासीत् । अश्रास्यत् ।

**द्रा**– द्राति । दद्रौ । द्राता । द्रास्यति । द्रातु/तात् । अद्रात् । द्रायात् । द्रेयात्/द्रायात् । अद्रासीत् । अद्रास्यत् ।

**प्सा**– प्साति । पप्सौ । प्साता । प्सास्यति । प्सातु/तात् । अप्सात् । प्सायात् । प्सेयात्/प्सायात् । अप्सासीत् । अप्सास्यत् ।

**रा**– राति । ररौ । राता । रास्यति । रातु/तात् । अरात् । रायात् । रायात् । अरासीत् । अरास्यत् ।

**ला**– लाति । ललौ । लाता । लास्यति । लातु/तात् । अलात् । लायात् । लायात् । अलासीत् । अलास्यत् ।

**दाप्** (दा)– दाति । ददौ । दाता । दास्यति । दातु/तात् । अदात् । दायात् । दायात् । अदासीत् । अदास्यत् ।

**पा**– पाति । पपौ । पाता । पास्यति । पातु/तात् । अपात् । पायात् । पायात् । अपासीत् । अपास्यत् ।

**ख्या**– धातु सार्वधातुक लकार लट्, लोट्, लङ्, विधिलिङ् यी चार लकारमा मात्र प्रयुक्त हुन्छ । ख्याति । ख्यातु/तात् । अख्यात् । ख्यायात् ।

**उपसर्गपूर्व भएमा**

**वा**– निर्वाति (निभ्छ), **द्रा**– निद्राति (निदाउँछ) ।

**विद**–धातु जान्नु अर्थमा छ । अकार इत्संज्ञक छ । परस्मैपदी हो । (सेट् सकर्मक )

**विद इति**– विद् धातुदेखि पर रहेका लट् लकारसम्बन्धी परस्मैपदका स्थानमा णलादि नौ विकल्पले होऊन् । लिट् नहुनाले द्वित्व हुँदैन ।

**वेद**– विद् लट्, तिप्, शप्, लुक्, 'विद्+ति' यहाँ "विदो लटो वा"ले तिप्का स्थानमा णल् भयो, "पुगन्त०"ले गुण भयो, 'वेद' सिद्ध भयो ।

**विदतुः**– विद्, तस्, शप्, लुक्, अतुस् 'विद्+अतुस्' "सार्वधातुकमपित्"ले ङित्त्व, गुण निषेध भयो । 'विदतुः' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि जान्नु । लट्मा तिप् आदिका स्थानमा णल् आदि आदेश भएका पक्षका सबै रूप मूलमा नै छन् ।

**वेत्ति**– "विदो लटो वा"ले णलादि आदेश वैकल्पिक हुने हुँदा तिप्का स्थानमा णल्

**५६९. उषविदजागृभ्योऽन्यतरस्याम् ३।१।३८॥**

एभ्यो लिटि आम्वा स्यात् । विदेरदन्तत्वप्रतिज्ञानादामि न गुणः । विदाञ्चकार, विवेद । वेदिता । वेदिष्यति ॥

**५७०. विदाङ्कुर्वन्त्वित्यन्यतरस्याम् ३।१।४१॥**

वेत्तेर्लोटि आम् गुणाभावो लोटो लुक् लोडन्तकरोत्यनुप्रयोगश्च वा निपात्यते । पुरुषवचने न विवक्षिते ॥

**५७१. तनादिकृञ्भ्य उः ३।१।७९॥**

तनादेः कृञश्च उः प्रत्ययः स्यात् । शपोऽपवादः । गुणौ । विदाङ्करोतु ॥

---

नभएको पक्षमा 'विद्+ति' यस्तै छ गुण चर्त्व भयो, 'वेत्ति' सिद्ध भयो । यस्तै 'विद्+तस्' यहाँ तस् ङित् हुनाले गुण भएन, चर्त्व भयो वित्तः । यस्तै अरू रूप पनि हुन्छन् ।

| **विद् लट्–** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | वेत्ति | वित्तः | विदन्ति |
| | मध्यमपुरुष | वेत्सि | वित्थः | वित्थ |
| | उत्तमपुरुष | वेद्मि | विद्वः | विद्मः |

**उषविदेति–** उष धातु विद धातु जागृ धातुदेखि लिट् पर भएमा आम् विकल्पले होस् । विद धातु अकारान्त स्वीकार गरिएकोले आम् पर भएमा गुण हुँदैन । "अतो लोपः"ले अकारको लोप हुन्छ । त्यसको स्थानिवद्भाव हुनाले लघूपध गुण हुँदैन भन्ने तात्पर्य हो ।

**विदाञ्चकार–** विद् धातुदेखि लिट् लकार भयो, 'विद्+ल्' भयो, "उषविद०"ले आम् प्रत्यय भयो, 'विद्+आम्+ल्' अकारको "अतो लोपः"ले लोप, स्थानिवत्त्वाद् गुणनिषेध, 'विदाम्+ल्' लिट्को लुक्, कृ धातुको अनुप्रयोग, द्वित्वादिकार्य भयो, 'विदाञ्चकार' सिद्ध भयो । यस्तै प्रकारले विदाञ्चक्रतुः आदि रूप हुन्छन् । भू धातुको अनुप्रयोगमा 'विदाम्बभूव' अस् धातुको अनुप्रयोगमा 'विदामास' आदि रूप हुन्छन् । आम् प्रत्यय नभएको पक्षमा– अनिट् धातुमा विद् (दिवादि), विनद् (रुधादि), विन्द् (तुदादि) को ग्रहण छ । अतः यो अदादिको विद ज्ञाने धातु सेट् हो, "एकाच उपदेशे०" नलाग्ने हुनाले लिट्मा सर्वत्र नित्य इट् आगम हुन्छ ।

| **विद् लिट्** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | विवेद | विविदतुः | विविदुः |
| | मध्यमपुरुष | विवेदिथ | विविदथुः | विविद |
| | उत्तमपुरुष | विवेद | विविदिव | विविदिम |

**लुट्मा–** वेदिता आदि र **लृट्मा** वेदिष्यति आदि रूप हुन्छन् ।

**विदामिति–** विद् धातुदेखि लोट्लकार परभएमा आम् प्रत्यय, गुणको अभाव, लोट्को लुक्, लोट्लकार अन्तमा हुने कृ धातुको अनुप्रयोग, यी चार कुरा विकल्पले निपातन गरिन्छन् । इति शब्द पढेकोले यहाँ पुरुष र वचनको विवक्षा छैन । अर्थात् सबै पुरुष र सबै वचनमा यी कार्य हुन्छन् । केवल प्रथमपुरुषको बहुवचन निर्देशन गरेकोले प्रथमपुरुषको बहुवचनमा मात्र सो कार्य हुने हो कि भन्ने शङ्का नगर्नू ।

**तनादिति–** तनादि धातुदेखि र कृञ् धातुदेखि उ प्रत्यय होस् सार्वधातुकसंज्ञक प्रत्यय पर भएमा । यो उप्रत्यय शप्को अपवाद हो ।

**विदाङ्करोतु–** विद् धातुदेखि विध्यादिअर्थमा लोट् भयो, 'विद्+ल्' भयो,

**५७२. अत उत्सार्वधातुके ६।४।११०॥**

उप्रत्ययान्तस्य कृञोऽत उत्सार्वधातुके क्ङिति । विदाङ्कुरुतात् । विदाङ्कुरुताम् । विदाङ्कुर्वन्तु । विदाङ्कुरु । विदाङ्करवाणि ।

अवेत् । अवित्ताम् ।

---

"विदाङ्कुर्वन्त्वित्यन्यतरस्याम्"ले आम् प्रत्यय, गुणको अभाव, लोट्को लुक्, लोट् लकार अन्तमा हुने कृ धातुको अनुप्रयोग, भयो, 'विदाम्+कृ+ल्' भयो, लकारका स्थानमा ति भयो, "तिङ्शित्०"ले सार्वधातुक संज्ञा भयो, "कर्तरि शप्"ले शप् प्रत्यय पायो, त्यसलाई बाधेर "तनादिकृञ्भ्य उः"ले उ प्रत्यय भयो, 'विदाम्+कृ+उति' भयो, तिका इकारका स्थानमा "एरुः"ले उत्व भयो, उलाई आर्धधातुक संज्ञा भयो, "सार्वधातुकार्धधातुकयोः"ले गुण भयो, 'विदाम्+कर्+उ+तु' भयो, उकारका स्थानमा पनि "सार्वधातुकार्ध०"ले नै गुण भयो, 'विदाम्+करोतु' भयो, मकारको स्थानमा अनुस्वार, परसवर्ण, भयो, 'विदाङ्करोतु' सिद्ध भयो ।

**अत उदिति**– उप्रत्यय अन्तमा हुने कृञ् धातुका अकारका स्थानमा उकार आदेश होस् सार्वधातुक संज्ञक कित् ङित् प्रत्यय पर भएमा ।

**विदाङ्कुरुतात्/विदाङ्करोतु**– विद् धातुदेखि आशीर्वाद अर्थमा लोट् लकार पूर्ववत् 'विदाम्+करु+तु' भएपछि तुका स्थानमा तातङ् भयो, 'विदाम्+करु+तात्' भयो, तातङ्मा ङित्व हुनाले "अत उत्सार्वधातुके"ले कका अकारका स्थानमा उकार भयो, गुण निषेध भयो, 'विदाम्+कुरुतात्' अनुस्वार, परसवर्ण भयो, 'विदाङ्कुरुतात्' सिद्ध भयो । तातङ् नभएको पक्षमा करुका उकारका स्थानमा गुण भयो, 'विदाम्+करोतु' भयो, अनुस्वार परसवर्ण भयो, 'विदाङ्करोतु' सिद्ध भयो । यसरी विध्यादि अर्थमा र आशीर्वाद अर्थमा तिप् र सिप्मा दुई-दुई रूप भएपनि दुवै लोट्का सम्मिलित रूप विदाङ्करोतु/विदाङ्कुरुतात् र विदाङ्कुरु/विदाङ्कुरुतात् हुन्छन् । अरु विभक्तिमा भिन्नता छैन ।

तस्, झि, थस्, थमा पनि "अत उत्सार्वधातुके"ले उत्व हुन्छ । मिप्, वस्, मस्मा "आडुत्तमस्य०"ले आट् आगम हुन्छ । आट्, पित् हुनाले "अत उत्सार्वधातुके" लाग्दैन । गुण अव् आदेश हुन्छ । दुवै लोट्का सम्मिलित रूप तल दिइन्छ-

| विद् लोट्- पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | विदाङ्करोतु/विदाङ्कुरुतात् | विदाङ्कुरुताम् | विदाङ्कुर्वन्तु |
| मध्यमपुरुष | विदाङ्कुरु/विदाङ्कुरुतात् | विदाङ्कुरुतम् | विदाङ्कुरुत |
| उत्तमपुरुष | विदाङ्करवाणि | विदाङ्करवाव | विदाङ्करवाम |

"विदाङ्कुर्वन्त्वित्यन्यतरस्याम्" नलागेको पक्षमा प्रथमपुरुषमा पूर्ववत्- वेत्तु/वित्तात्, वित्ताम्, विदन्तु यी रूप हुन्छन् । मध्यमपुरुषमा सिप्का स्थानमा हि भएपछि हिका स्थानमा"हुझल्भ्यो हेर्धिः"ले धि हुन्छ । हि ङित् हुनाले हिका स्थानमा भएको धि पनि ङित् हुन्छ, तातङ्मा पनि ङित्व हुनाले धि र तात् पर भएमा लघुपध गुण हुदैन । अरू विभक्तिमा पूर्ववत् कार्य भएर विद्धि/वित्तात्, वित्तम, वित्त यी रूप हुन्छन् । उत्तमपुरुषमा आट् पित् हुनाले गुण हुन्छ । वेदानि, वेदाव, वेदाम यी रूप हुन्छन् ।

**अवेत्/अवेद्**– विद् लङ्, अट् आगम, तिप्, 'अविद्+ति' शप्, लुक्, गुण, 'अवेद्+ति', 'अवेद्+त्', यहाँ "हल्ङ्याब्भ्यो०"ले तकारको लोप, दकारका स्थानमा चर्त्व, 'अवेत्' चर्त्व नभएका पक्षमा 'अवेद्' यी दुई रूप सिद्ध भए ।

**अवित्ताम्**– 'अविद्+तस्', 'अविद्+ताम्', शप्, लुक्, गुणनिषेध, चर्त्व भयो, 'अवित्ताम्' सिद्ध भयो ।

अविदुः ॥

**५७३. दश्च ८।२।७५॥**

धातोर्दस्य पदान्तस्य सिपि रुर्वा । अवेः, अवेत् । विद्यात् । विद्याताम् । विद्युः । विद्यात् । विद्यास्ताम् । अवेदीत् । अवेदिष्यत् ॥ **अस्** भुवि ॥१७॥ अस्ति ॥

**५७४. श्नसोरल्लोपः ६।४।१११॥**

श्नस्यास्तेश्चातो लोपः सार्वधातुके क्ङिति । स्तः । सन्ति । असि । स्थः । स्थ । अस्मि । स्वः । स्मः ॥

**५७५. उपसर्गप्रादुर्भ्यामस्तिर्यच्परः ८।३।८७॥**

उपसर्गेणः प्रादुसश्चास्तेः सस्य षो यकारेऽचि च परे ।

---

**अविदुः**– 'अविद्+झि', शप्, लुक्, गुणनिषेध, "सिजभ्यस्तविदिभ्यश्च"ले जुस् भयो, 'अविदुः' सिद्ध भयो ।

**दश्चेति**– धातुका पदान्त दकारका स्थानमा रु आदेश विकल्पले होस् सिप् पर भएमा ।

**अवेः/अवेत्/अवेद्**– 'अविद्+सि', यहाँ लघूपधगुण, 'अवेद्+सि', सिका इकारको "इतश्च"ले लोप, 'अवेद्+स्', "सिपि धातो रुर्वा"ले दकारका स्थानमा वैकल्पिक रु, 'अवेर्+स्' "रात्सस्य"लाएर सकारको संयोगान्तलोप, विसर्ग, 'अवेः' सिद्ध भयो । रुत्व नभएको पक्षमा 'अवेद्+स्' यहाँ संयोगान्तलोप, "वाऽवसाने"ले चर्त्व, 'अवेत्' सिद्ध भयो, चर्त्व नभएमा 'अवेद्' सिद्ध भयो । यसरी तीन रूप सिद्ध भए । द्विवचन, बहुवचनमा अवित्तम्, अवित्त यी रूप हुन्छन् । उत्तम पुरुषमा अवेदम्, अविद्व, अविद्म यी रूप हुन्छन् । **लुङ्मा**– "वदव्रज०"ले पाएको वृद्धि "नेटि"ले निषेध हुन्छ । सबै रूप तल दिइन्छ–

| विद्. लुङ्– | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अवेदीत् | अवेदिष्टाम् | अवेदिषुः |
| | मध्यमपुरुष | अवेदीः | अवेदिष्टम् | अवेदिष्ट |
| | उत्तमपुरुष | अवेदिषम् | अवेदिष्व | अवेदिष्म |

**लृङ्मा**– अवेदिष्यत् आदि रूप हुन्छन् ।

अस् धातु हुनु अर्थमा छ । (सेट् अकर्मक )

**अस्ति**– अस् लट्, तिप्, शप्, शप्को लुक्, 'अस्ति' सिद्ध भयो ।

**श्नसोरिति**– श्नम् प्रत्ययको र अस् धातुको अकारको लोप होस्, सार्वधातुकसंज्ञक कित् ङित् प्रत्यय पर भएमा । तिप्, सिप् र मिप् पित् हुनाले यी पर भएमा अकारको लोप हुँदैन । तिप्, सिप्, मिप् बाहेक अरू विभक्तिलाई "सार्वधातुकमपित्"ले ङित्वद् गरेको हुनाले ती पर भएमा अकारको लोप हुन्छ ।

**स्तः**– अस् लट्, तस्, शप्, लुक्, 'अस्+तस्' भएपछि "श्नसोरल्लोपः"ले अकारको लोप भयो 'स्+तस्' भयो, रुत्व, विसर्ग, भयो, 'स्तः' सिद्ध भयो ।

**सन्ति**– 'अस्+अन्ति' यहाँ अकारको लोप 'स्+अन्ति'-'सन्ति' सिद्ध भयो ।

**असि**– पूर्ववत् 'अस्+सि',यहाँ "तासस्त्योर्लोपः"ले सकारको लोप भयो, 'असि' सिद्ध भयो । अरू विभक्तिमा पनि विशेष कार्य छैन ।

**उपसर्गेति**– उपसर्गमा रहेको इण् प्रत्याहार र प्रादुस् शब्ददेखि पर रहेका अस् धातुका दन्त्य सकारका स्थानमा मूर्धन्य षकार होस्, यकार र अच् पर भएमा ।

निष्यात् । प्रनिषन्ति । प्रादुःषन्ति । यच्परः किम् ? अभिस्तः ॥

**५७६. अस्तेर्भूः २।४।५२॥**

आर्धधातुके । बभूव । भविता । भविष्यति । अस्तु, स्तात् । स्ताम् । सन्तु ॥

**५७७. घ्वसोरेद्धावभ्यासलोपश्च ६।४।११९॥**

घोरस्तेश्च एत्त्वं स्याद्धौ परे अभ्यासलोश्च । एत्वस्यासिद्धत्वाद्धेर्धिः ।

---

**निष्यात्**– नि उपसर्गपूर्वक अस् धातुको विध्यादि अर्थमा लिङ् लकार आयो, यासुट् ङित् हुनाले "श्नसोरल्लोपः"ले अकारको लोप भएर 'निस्यात्' भयो । निस्यात् यहाँ "उपसर्गप्रादुर्भ्यां०"ले उपसर्गको इण्-निको इकारदेखि पर अस् धातुको दन्त्य सकार स्यात्को सकार छ, सकारदेखि पर यासुट्को यकार छ र "उपसर्ग प्रादुर्भ्यां०"ले सकारका स्थानमा मूर्धन्य षकार भयो, 'निष्यात्' सिद्ध भयो ।

**प्रादुःष्यात्**– 'स्यात्' अस् धातुको विधिलिङ्को रूप सिद्ध भएकै छ, प्रादुस् शब्दको पूर्व प्रयोग भयो प्रादुस्+स्यात् भयो यहाँ प्रादुस् शब्ददेखि पर रहेको अस् धातुको दन्त्य सकारका स्थानमा "उपसर्गप्रादुर्भ्यां०"ले मूर्धन्य षकार भयो, 'प्रादुस्+ष्यात्' भयो, सकारको, रुत्व, विसर्ग, "वा शरि"ले विसर्गका स्थानमा वैकल्पिक विसर्ग भयो, 'प्रादुःष्यात्' सिद्ध भयो । विसर्ग नभएको पक्षमा "विसर्जनीयस्य सः"ले दन्त्य सकार, ष्टुत्व भयो, 'प्रादुष्ष्यात्' सिद्ध भयो । दुई रूप भए ।

**प्रनिषन्ति, प्रादुःषन्ति, प्रादुष्षन्ति**– यहाँ पनि उक्त सूत्र "उपसर्गप्रादुर्भ्यां०"ले षत्व हुन्छ ।

**यच्पर इति किम् ?**– "उपसर्गप्रादुर्भ्यां०" यो सूत्रमा यकार र अच् पर भएमा किन भन्नु नभन्ने हो भने 'अभिस्तः' यहाँ षत्व होला । अत यकार र अच् पर भएमा भनियो, 'अभिस्तः' यहाँ अस धातुका दन्त्य सकारदेखि पर यकार र अच् छैन, तकार पर छ र षत्व भएन, 'अभिस्तः' यस्तै रह्यो । षत्वको प्रक्रिया बुझाउनका निमित्त पहिले विधिलिङ्को रूप दिइएको हो । अब लिट् आदि लकारमा हुने विशेष प्रक्रिया बताइन्छ ।

**अस्तेरिति**– अस् धातुका स्थानमा भू आदेश होस् आर्धधातुकका विषयमा ।

**बभूव**– अस् धातुदेखि लिट् लकार ल्याउनु छ भन्दा असका स्थानमा भू आदेश भयो, लिट् लकार, तिप्, णल्, वुक् आगम, 'भूव्+अ' भयो, द्वित्वादिकार्य माथि भू धातुमा जस्तै भयो, 'बभूव' सिद्ध भयो । अरू सबै रूप पनि भू धातुका जस्तै हुन्छन् । प्रक्रिया पनि उस्तै हुन्छ । यस्तै प्रकारले अरू आर्धधातुक लुट्, लृट्, आशीर्लिङ्, लुङ्, लृङ्का विषयमा अस्का स्थानमा भू आदेश हुन्छ र भू धातुका जस्तै रूप हुन्छन् केही फरक छैन ।

**अस्तु/स्तात्**– विधिलोट् तिपमा 'अस्तु' यो रूप पूर्ववत् हुन्छ । आशीर्लोट्मा तुका स्थानमा वैकल्पिक तातङ् भएपछि तातङ्मा ङित्त्व हुनाले अकारको लोप भएर 'स्तात्' नभएका पक्षमा 'अस्तु' यो रूप सिद्ध हुन्छ । दुवै लोट्का सम्मिलित रूप 'अस्तु', 'स्तात्' हुन्छन् ।

**स्ताम्**– तस्मा 'अस्+तस्' यहाँ तस्का स्थानमा ताम् आदेश "श्नसोः०"ले अकारको लोप भयो, 'स्ताम्' सिद्ध भयो ।

**सन्तु**– 'अस्+अन्तु' पूर्ववत् अकार लोप, 'सन्तु' सिद्ध भयो ।

**घ्वसोरेद्धेति**– घुसंज्ञक धातु र अस् धातुका स्थानमा एत्व होस् अभ्यास लोप पनि होस्, हि पर भएमा । यस सूत्रका दुई कार्य छन्- एत्व र अभ्यास लोप । अभ्यास लोप जुहोत्यादिमा हुन्छ । यहाँ अस् धातुमा एत्वमात्र हुन्छ अभ्यास छैन र अभ्यास लोप हुने प्रसङ्ग नै उठ्दैन ।

**एत्वस्येति**– आभीय हुनाले एत्व असिद्ध हुन्छ र हिका स्थानमा धि आदेश हुन्छ ।

श्नसोरित्यल्लोपः । तातङ्पक्षे एत्त्वं न, परेण तातङा बाधात् । एधि, स्तात् । स्तम् । स्त । असानि । असाव । असाम । आसीत् । आस्ताम् । आसन् । स्यात् । स्याताम् । स्युः । भूयात् । अभूत् । अभविष्यत् ॥ **इण्** गतौ ॥ १८॥ एति । इतः ॥

---

"श्नसोरल्लोपः"ले अकारलोप हुन्छ ।

**तातङ्पक्ष इति**- तातङ् भएको पक्षमा एत्व हुँदैन । तातङ् पर छ र एत्वलाई बाध्छ ।

**एधि/स्तात्**- सिप्मा 'अस्+हि' भएपछि "ध्वसोरेद्धा०"ले अलोऽन्त्यस्य लाएर सकारका स्थानमा एकार भयो, 'अ+ए+हि' भयो, आभीयत्वात् एत्व असिद्ध भयो, "हुफल्भ्यो:०"ले धि आदेश भयो, 'अ+ए+धि' भयो, "श्नसोरल्लोपः"ले अकारको लोप भयो, 'एधि' सिद्ध भयो । आशीर्लोट्मा परत्वात् "घ्वसो:०"लाई बाधेर तातङ् आदेश भयो, 'अस्तात्', "श्नसो:०"ले अकारको लोप भयो, 'स्तात्' सिद्ध भयो । तातङ् नभएको पक्षमा पूर्ववत् 'एधि' सिद्ध भयो ।

थस् र थमा स्तम्, स्त यी रूप हुन्छन् । उत्तमपुरुषमा आट्मा पित्व हुनाले अकार लोप हुदैन असानि, असाव, असाम यी रूप हुन्छन् ।

**लङ्मा- आसीत्**- अस् लङ्, आट्, वृद्धि, 'आस्+ल्' तिप्, शप्, लुक्, 'आस्+त्' भयो, "अस्ति सिचोऽपृक्ते"ले ईट् आगम भयो, 'आस्+ईत्' 'आसीत्' सिद्ध भयो । "आसीः" पनि यसैगरी सिद्ध हुन्छ ।

[८३] **आस्ताम्**- 'आ+अस्+ल्', 'आ+अस्+तस्', "श्नसो:०"ले अकारलोप, 'आस्ताम्' सिद्ध भयो । आसन् आदि रूप पनि यसैगरी सिद्ध हुन्छन् ।

| **अस् लङ्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | आसीत् | आस्ताम् | आसन् |
| | मध्यमपुरुष | आसीः | आस्तम् | आस्त |
| | उत्तमपुरुष | आसम् | आस्व | आस्म |

**विधिलिङ्मा-** यासुट् ङित् हुनाले सबै विभक्तिमा "श्नसोरल्लोपः"ले अकारको लोप हुन्छ ।

| **अस् वि.लि.-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | स्यात् | स्याताम् | स्युः |
| | मध्यमपुरुष | स्याः | स्यातम् | स्यात |
| | उत्तमपुरुष | स्यानि | स्याव | स्याम |

**आशीर्लिङ्मा-** अस् धातुका स्थानमा भू आदेश भएपछि सबै रूप भू धातुमा जस्तै हुन्छन् ।

| **अस् आ.लि.-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | भूयात् | भूयास्ताम् | भूयासुः |
| | मध्यमपुरुष | भूयाः | भूयास्तम् | भूयास्त |
| | उत्तमपुरुष | भूयासम् | भूयास्व | भूयास्म |

लुङ्मा र लृङ्मा पनि अस् धातुका स्थानमा भू आदेश हुने हुनाले भू धातुमा जस्तै रूप हुन्छन् ।

इण् धातु हिंड्नु अर्थमा छ । णकारको इत्संज्ञा हुन्छ । यो धातु परस्मैपदी हो । (अनिट् अर्थवशाद् सर्कमक अर्कमक दुवै )

**एति, इतः**- इण् लट्, तिप्, शप्, लुक्, 'इ+ति' यहाँ "सार्वधातुकार्धधातुकयोः"ले गुण भयो, 'एति' सिद्ध भयो । तस्मा पनि 'इ+तस्' यहाँ ङित्वाद् गुणनिषेध भयो, 'इतः' सिद्ध भयो ।

---

८३ आस्ताम्, आस्त, आदिमा परत्वात् "श्नसोरल्लोपः"ले अकारको लोप पहिले हुन्छ । पछि आभीयत्वेन अकार लोप असिद्ध भएर अजादि धातु मानेर आट् आगम हुन्छ भन्दा प्रक्रिया ठीक हुन्छ ।

**५७८. इणो यण् ६।४।८१॥**

अजादौ प्रत्यये परे । यन्ति ॥

**५७९. अभ्यासस्यासवर्णे ६।४।७८॥**

अभ्यासस्य इवर्णोवर्णयोरियङुवङौ स्तोऽसवर्णेऽचि । इयाय ॥

**५८०. दीर्घ इणः किति ७।४।६९॥**

इणोऽभ्यासस्य दीर्घः स्यात् किति लिटि । ईयतुः । ईयुः । इययिथ, इयेथ ।

---

**इण् इति**– इण् धातुका स्थानमा यण् होस् अच् आदिमा हुने प्रत्यय पर भएमा ।

**यन्ति**– इधातुदेखि लट्, झि, अन्त् आदेश, 'इ+अन्ति' यहाँ "इको यणचि"लाई बाधेर "अचिश्नुधातु०"ले इयङ् पाएकोमा बाधेर "इणो यण्"ले यण् भयो, 'यन्ति' सिद्ध भयो ।

| **इण् लट्**– | <u>पुरुष</u> | <u>एकवचन</u> | <u>द्विवचन</u> | <u>बहुवचन</u> |
|---|---|---|---|---|
| | प्रथमपुरुष | एति | इतः | यन्ति |
| | मध्यमपुरुष | एषि | इथः | इथ |
| | उत्तमपुरुष | एमि | इवः | इमः |

**अभ्यासस्येति**– अभ्यासमा रहेका इवर्ण उवर्णका स्थानमा इयङ्, उवङ् आदेश होऊन्, असवर्ण अच् पर भएमा ।

**इयाय**– इ धातुदेखि लिट्, तिप्, णल्, 'इ+अ', द्वित्व, 'इ+इ+अ' यहाँ पछिल्लो इकारका स्थानमा "अचोञ्णिति"ले वृद्धि, 'इ+ऐ+अ' "अभ्यासस्यासवर्णे"ले अभ्यासका इकारका स्थानमा इयङ् आदेश 'इय्+ऐ+अ', ऐकारका स्थानमा आय् आदेश 'इय्+आय्+अ'- 'इयाय' सिद्ध भयो ।

**दीर्घ इति**– इण् धातुका अभ्यासका स्थानमा दीर्घ होस्, कित्, लिट् पर भएमा । दीर्घ गर्नाको सामर्थ्यले "ह्रस्वः"ले अभ्यासको ह्रस्व हुँदैन ।

**ईयतुः**– 'इ+अतुस्', द्वित्व, 'इ+इ+अतुस्' भएपछि "येन नाव्यवधानं तेन व्यवहितेऽपि" यो न्याय लगाएर "दीर्घ इणः"ले अभ्यासको दीर्घ 'ई+इ+अतुस्', "इणो यण्"ले यण् भयो, 'ईयतुः' सिद्ध भयो । यस्तै प्रकारले 'ईयुः' सिद्ध हुन्छ ।

**इययिथ/इयेथ**– इ धातुदेखि लिट्, सिप्, थल्, 'इ+थ' भएपछि "आर्धधातुकस्येड्वलादेः"ले इट् आगम पायो, "एकाच०"ले निषेध भयो, "कृसृभृवृस्तुद्रु०" लाएर नित्य इट् आगम पायो, "अचस्तास्वत्०"ले निषेध भयो, त्यसपछि "ऋतो भारद्वाजस्य"ले भारद्वाजका मतमा इट्आगम भयो, 'इ+इथ', द्वित्व भयो, 'इ+इ+इथ' भयो, अभ्यासोत्तर खण्डका इकारका स्थानमा गुण 'इ+ए+इथ' अय् आदेशे 'इ+अयिथ', "अभ्यासस्या०"ले इयङ् आदेश [८४] 'इय्+अय्+इथ' वर्णमेलन- 'इययिथ' सिद्ध भयो । इट् आगम नभएका पक्षमा 'इ+थ' यहाँ द्वित्व भयो, 'इ+इ+थ' गुण भयो, 'इ+एथ', "अभ्यासस्यासवर्णे"ले इयङ् भयो, 'इयेथ' सिद्ध भयो ।

"अजन्तोऽकारवान् वा यस्तास्यनिट् थलि वेडयम्"यो कारिकाअनुसार यो अजन्त तासि प्रत्ययमा नित्यानिट् धातु छ र थल्मा वेट् भयो । कृसृभृवृ आदि चारै सूत्रको भनाइको निष्कर्ष यो कारिकामा छ भन्ने कुरा माथि नै भनिसकिएको छ, प्रत्यभिज्ञानार्थ मात्र पुनः यहाँ उल्लेख गरिएको हो ।

बाँकी रूप- ईयथुः, ईय । इयाय/इयय, ईयिव, ईयिम । यहाँ मुख्य ध्यान राख्नु पर्ने कुरा- कित् लिट्मा अभ्यासको "दीर्घ इणः किति"ले दीर्घ हुन्छ र अभ्यासोत्तर इकारका स्थानमा "इणो यण्"ले यण् हुन्छ । अकित् लिट्-तिप्, सिप्, मिप्, अथवा णल्, थल् र णल्मा "अभ्यासस्यासवर्णे"ले

---

८४ इयङ् विधान गर्नका सामर्थ्यले हलादिशेष हुँदैन ।

एता । एष्यति । एतु । ऐत् । ऐताम् । आयन् । इयात् । ईयात् ॥

**५८१. एतेर्लिङि ७।४।२४॥**

उपसर्गात्परस्य इणोऽणो ह्रस्व आर्धधातुके किति लिङि । निरियात् ।

---

इयङ् हुन्छ । अतः इयङ् भएको ठाउँमा तिप्, सिप्, मिप्मा ह्रस्व इकार हुन्छ । "दीर्घ इणः किति"ले दीर्घ भएको ठाउँ तिप्, सिप्, मिप् बाहेक अन्यत्र दीर्घ ईकार हुन्छ ।

**लुट्मा** एता, एतारौ, एतारः आदि रूप । **लृट्मा** एष्यति, एष्यतः, एष्यन्ति, आदि रूप हुन्छन् । **लोट्मा** साधनप्रक्रिया आफै ऊह गर्नू । रूपहरू तल दिइन्छ-

| **इण् लोट्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | एतु/इतात् | इताम् | यन्तु |
| | मध्यमपुरुष | इहि/इतात् | इतम् | इत |
| | उत्तमपुरुष | अयानि | अयाव | अयाम |

**ऐत्**– इ धातुदेखि लङ्, 'इ+ल्' आट् आगम 'आ+इ+ल्', वृद्धि 'ऐ+ल्', तिप्, शप्, लुक्, 'ऐति', तिका इकारको लोप 'ऐत्' सिद्ध भयो ।

**ऐताम्**– 'आ+इ+ल्', 'ऐ+ल्', तस्, शप्, लुक्, तस्का स्थानमा ताम् भयो, 'ऐताम्' सिद्ध भयो ।

**आयन्**– 'ऐ+अन्ति', शप्, लुक्, आय आदेश, इकार लोप संयोगान्त लोप 'आयन्' सिद्ध भयो ।

**ऐः**– 'इ+ल्', आट् आगम, वृद्धि, सिप्, शप्, लुक्, सिका इकारको लोप रुत्व विसर्ग भयो, 'ऐः' सिद्ध भयो । यस्तै प्रकारले ऐतम्, ऐत । आयम्, ऐव, ऐम । यी रूप पनि सिद्ध हुन्छन् । यहाँ आयन् र आयम् यी दुई ठाउँमा । झका स्थानमा अन्ति र मिप्का स्थानमा अम् गरेपछि "इणो यण्"ले यण् गरेर यन्ति, यम्, भएपछि आभीयत्वात् यण् असिद्ध भएर अजादि धातु नै हुनाले आट् आगम हुन्छ र आयन्, आयम्, यी रूप बन्दछन् भनेर कोही शिष्टहरू भन्छन् भने, कुनै शिष्टहरू– "आडजादीनाम्" सूत्र नै आवश्यक छैन "आटश्च" यो सूत्र "अटश्च" यस्तो पढेपछि लकार भएकै अवस्थामा अट् आगम र वृद्धि हुन्छ, अनि आय् आदेश हुन्छ । 'ऐज्यत' आदिमा दोष जाँदैन भन्दछन् । जसरी होस् 'आयन्', 'आयम्', यी रूप बन्दछन् ।

**विधिलिङ्** सार्वधातुक लिङ् हुनाले यासुट्का सकारको लोप हुन्छ । रूपहरू तल दिइन्छ ।

| **इण् वि.लि.-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | इयात् | इयाताम् | इयुः |
| | मध्यमपुरुष | इयाः | इयातम् | इयात |
| | उत्तमपुरुष | इयाम् | इयाव | इयाम |

यहाँ आशीर्लिङ्मा "अकृत्सार्वधातुकयोर्दीर्घः"ले इकारको दीर्घ भयो । आर्धधातुकलिङ् हुनाले ताम् आदिमा सकारको लोप भएन ।

| **इण् आ.लि.-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | ईयात् | ईयास्ताम् | ईयासुः |
| | मध्यमपुरुष | ईयाः | ईयास्तम् | ईयास्त |
| | उत्तमपुरुष | ईयासम् | ईयास्व | ईयास्म |

**एतेरिति**– उपसर्ग देखि पर रहेका इण् धातुका अण्का स्थानमा ह्रस्व होस्, कित् लिङ् पर भएमा ।

**निरियात्**–'निर्+ईयात्' यहाँ निर् उपसर्गदेखि पर यासुट्को "किदाशिषि"ले कित्त्व गरेको हुनाले कित् लिङ् पर भएको इण् धातुको अण् ईयात्को दीर्घ ईकारका स्थानमा "एतेर्लिङि"ले ह्रस्व भयो, 'निरियात्' सिद्ध भयो ।

उभयत आश्रयणे नान्तादिवत् । अभीयात् । अणः किम् ? समेयात् ॥

**५८२. इणो गा लुङि २।४।४५॥**

गातिस्थेति सिचो लुक् । अगात् । ऐष्यत् ।

**इति परस्मैपदिनः**

---

(प.) उभयत आश्रय गरेमा अर्थात् पूर्वान्तवद्भाव र परादिवद्भाव दुवै आश्रय गर्नु परेमा "अन्तादिवच्च" यो सूत्र लाग्दैन ।

**अभीयात्**-'अभि+ईयात्' यहाँ "अकः सवर्णे दीर्घः"ले दीर्घ भएर 'अभीयात्' भएपछि 'अन्तादिवच्च' लगाएर पूर्वान्तवद्भाव हुँदा 'अभी' यहाँ ईकार उपसर्गकै मानियो परादिवद्भावले सो ईकार धातुको मानियो र ह्रस्व पाएकोमा "उभयत आश्रयणे०" यस परिभाषाले अन्तादिवद्भाव निषेध भयो ह्रस्व भएन 'अभीयात्' यस्तै रह्यो ।

**अणः किम्**– एतेर्लिङि यो सूत्रमा अणः किन भन्नु नभने "अचश्च" यो सूत्रबाट अचः यो षष्ठ्यन्त पद आउला र इण् धातुका अच्को ह्रस्व होस् यो अर्थ होला र दोष जाला 'समेयात्' यहाँ, कसरी ? 'सम्+आ+ई+यात्' यहाँ 'आ+ईयात्'मा "आद्गुणः"ले गुण भएर 'सम्+एयात्' भयो, परादिवद्भाव भएर एयात्को एकार धातुको जस्तै भयो र सम् उपसर्गदेखि पर रहेको इण्को अच्एकार हुनाले ह्रस्व पायो, त्यो नहोस् भनेर हामीले "अणः" भन्यौ, "अणः" भनेपछि अण्को ह्रस्व होस् भन्ने अर्थ भयो, यहाँ अण् छैन (किनभने "पूर्वेणैवाण् ग्रहाः मताः" भनेको छ । "एतेर्लिङि" यो सूत्रमा अ,इ,उ लाई अण् मानिन्छ । यहाँ अण् छैन र ह्रस्व भएन, 'समेयात्' यस्तै रह्यो ।

**इणो गेति**– इण् धातुका स्थानमा गा आदेश होस् लुङ्को विषयमा ।

**गातिस्थेति**– "गातिस्थाघुपाभूभ्यः सिचः परस्मैपदेषु"ले सिच्को लुक् हुन्छ ।

**अगात्**– लुङ्का विषयमा इण्का स्थानमा गा आदेश भयो, अनि गा धातुदेखि लुङ् आयो, अट् आगम भयो, 'अगा+ल्' भयो, तिप्, च्लि, सिच्, इट्निषेध, 'अगास्+ति' भयो "गातिस्था०"ले, सिच्को लुक् तिका इकारको "इतश्च"ले लोप भयो, 'अगात्' सिद्ध भयो । यस्तै प्रकारले अगाताम्, अगुः आदि रूप बन्दछन् । अगुः यहाँ "आतः"ले झिका स्थानमा जुस् हुन्छ ।

| **इण् लुङ्**– | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अगात् | अगाताम् | अगुः |
| | मध्यमपुरुष | अगाः | अगातम् | अगात |
| | उत्तमपुरुष | अगाम् | अगाव | अगाम |

**लृङ्मा**– ऐष्यत्, ऐष्यताम्, ऐष्यन् । ऐष्यः, ऐष्यतम्, ऐष्यत । ऐष्यम्, ऐष्याव, ऐष्याम । यो इण् धातु अत्यन्त प्रयोगमा आउने प्रसिद्ध धातु हो । उपसर्गको योगमा यसका अनेक अर्थ छन्, जस्तै–

| | | |
|---|---|---|
| अपैति (हट्छ) | व्येति (विकृत हुन्छ) | उदेति (उदाउँछ) |
| समेति (मिल्दछ) | अभ्येति (सम्मुख हुन्छ) | समुदेति (जम्मा हुन्छ) |
| अन्वेति (अन्वित हुन्छ, मिल्छ) | प्रत्येति (विश्वास गर्छ, बुझ्छ) | अभिप्रैति (अभिप्रायः राख्छ) |
| अवैति (जान्दछ) | उपैति (नजिक जान्छ) | अध्येति (पढ्छ) |
| अभ्युदेति (समृद्ध हुन्छ) | | |

**अदादिमा परस्मैपदी धातु समाप्त भए ।**

---

**शीङ्** स्वप्ने. ॥१९॥

**५८३. शीङः सार्वधातुके गुणः ७।४।२१॥**

क्ङिति चेत्यस्यापवादः । शेते । शयाते ॥

**५८४. शीङो रुट् ७।१।६॥**

शीङः परस्य झादेशस्यातो रुडागमः स्यात् । शेरते । शेषे । शयाथे । शेध्वे । शये । शेवहे । शेमहे । शिश्ये । शिश्याते । शिश्यिरे । शयिता । शयिष्यते । शेताम् । शयाताम् । अशेत । अशयाताम् । अशेरत ।

---

**अब आत्मनेपदी धातु दिइन्छ-**

**शीङ्** धातु सुत्नु अर्थमा छ । ङकारको इत्संज्ञा हुन्छ "अनुदात्तङित"ले आत्मनेपद हुन्छ । (सेट् अकर्मक )

**शीङ् इति**- शीङ् धातुका स्थानमा सार्वधातुकसंज्ञक प्रत्यय पर भएमा गुण होस् । यो सूत्र "क्ङिति च" यस सूत्रको अपवाद हो ।

**शेते**- शीङ् लट्, तिप्, शप्, लुक्, तका अकारको एत्व, 'शी+ते' यहाँ "सार्वधातुकमपित्"ले ते यसलाई ङित् गरेको हुनाले "क्ङिति च"ले निषेध पायो, त्यसलाई बाधेर "शीङः सार्वधातुके०"ले गुण भयो, 'शेते' सिद्ध भयो ।

**शयाते**- शीङ् लट्, आताम्, एत्व 'शी+आते' यहाँ "क्ङिति च"लाई बाधेर "शीङःसार्वधातुके०"ले गुण भयो, अय् आदेश भयो, 'शयाते' सिद्ध भयो ।

**शीङ इति**-शीङ् धातुदेखि पर रहेका झका स्थानमा आदेश भएका अत्को रुट् आगम होस् ।

**शेरते**- शीङ् लट्, झ, शप्, लुक् "आत्मनेपदेष्वनतः"ले झकारका स्थानमा अत्, एत्व, 'शी+अते' "शीङः सार्वधातुके०"ले गुण 'शे+अते' "शीङो रुट्"ले अत्को रुट् आगम, उट्को इत्संज्ञा लोप टित्त्वाद् अत्को आदि पट्टि र् भयो, 'शेर्+अते'- 'शेरते' सिद्ध भयो ।

बाँकी रूप- शेषे, शयाथे, शेध्वे । शये, शेवहे, शेमहे । यी सबै ठाउँमा विशेषकार्य गुण छ । "ऊदृदन्तैः" यो कारिकाभित्र पर्ने हुनाले, शीङ् धातु सेट् हो, अतः इट् हुने स्थलमा सर्वत्र नित्य इट् हुन्छ । लिट्मा "इण षीध्वं०"लाग्ने ठाउँमा "विभाषेटः" लाग्छ । सबै विभक्तिमा इयङ्लाई बाधेर "एरनेकाचः०"ले यण् हुन्छ । लिट्का रूप तल दिइन्छ-

| **शी लिट्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | शिश्ये | शिश्याते | शिश्यिरे । |
| | मध्यमपुरुष | शिश्यिषे | शिश्याथे | शिश्यिढ्वे/शिश्यिध्वे |
| | उत्तमपुरुष | शिश्ये | शिश्यिवहे | शिश्यिमहे |

**लुट्मा**- शयिता आदि रूप हुन्छन् । यहाँ तासि प्रत्ययको इट्, गुण, अय्आदेश, डा आदेश, टिलोप यिनै कार्य हुन्छन् ।

**लृट्मा**- शयिष्यते आदि रूप हुन्छन् । यहाँ स्य प्रत्ययको इट्, गुण, अय् आदेश र षत्व यिनै विशेष कार्य छन् ।

**लोट्मा**- शेताम्, शयाताम्, शेरताम् । शेष्व, शयाथाम्, शेध्वम् । शयै, शयावहै, शयामहै । यी रूप हुन्छन् ।

**लङ्मा**- अशेत, अशयाताम्, अशेरत । अशेथाः, अशयाथाम्, अशेध्वम् । अशयि, अशेवहि, अशेमहि । यी रूप हुन्छन् ।

शयीत । शयीयातम् । शयीरन् । शयिषीष्ट । अशयिष्ट । अशयिष्यत । **इङ्** अध्ययने ॥२०॥ इङिकावध्युपसर्गतो न व्यभिचरतः । अधीते । अधीयाते । अधीयते ॥

---

**शयीत**– 'शी विधिलिङ्, त, सीयुट् 'शी+सीय्+त', सुट्, 'शी+सीय्+स्+त' दुवै सको लोप 'शी+ईय्+त', "शीङः सार्वधातुके०"ले गुण, 'शे+ईय्+त' अय् आदेश, "लोपो व्योः०"ले यकारको लोप भयो, 'शयीत' सिद्ध भयो । यस्तै प्रकारले शयीयाताम् आदि रूप सिद्ध हुन्छन् ।

| **शी वि.लि.–** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | शयीत | शयीयाताम् | शयीरन् |
| | मध्यमपुरुष | शयीथाः | शयीयाथाम् | शयीध्वम् |
| | उत्तमपुरुष | शयीय | शयीवहि | शयीमहि |

**"अथवा सुखं शयीथा निकटे जागर्ति जाह्नवी भवतः"** (अप्पयदीक्षित)

आर्धधातुक लिङ्मा सकारको लोप हुँदैन । ध्वम्मा "विभाषेटः" लाग्छ । "सार्वधातुका०"ले गुण हुन्छ । अरू कार्य पूर्ववत् हुन्छ । रूपहरू तल दिइन्छ-

| **शी आ.लि.–** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | शयिषीष्ट | शयिषीयास्ताम् | शयिषीरन् |
| | मध्यमपुरुष | शयिषीष्ठाः | शयिषीयास्थाम् | शयिषीढ्वम्/शयिषीध्वम् |
| | उत्तमपुरुष | शयिषीय | शयिषीवहि | शयिषीमहि |

**अशयिष्ट**– शी लुङ्, अट्, 'अशी+ल्', त, च्लि, सिच्, इट्, 'अशी+इस्+त' "सार्वधातुकार्ध०"ले गुण, अय् आदेश, 'अशयिस्त', षत्व, ष्टुत्व, 'अशयिष्ट' सिद्ध भयो । यस्तै प्रकारले आशयिषाताम् आदि रूप सिद्ध हुन्छन् ।

| **शी लुङ्–** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अशयिष्ट | अशयिषाताम् | अशयिषत |
| | मध्यमपुरुष | अशयिष्ठाः | अशयिषाथाम् | अशयिढ्वम्/अशयिध्वम् |
| | उत्तमपुरुष | अशयिषि | अशयिष्वहि | अशयिष्महि |

**लृङ्मा**– अशयिष्यत आदि रूप हुन्छन् ।

**उपसर्गको योगमा अर्थको भिन्नता–**

संशेते/विशेते– (सन्देह गर्छ) अनुशेते (पछुतो मान्छ) आशेते (अभिप्राय राख्छ)

**इङ्** धातु (पढ्नु अर्थमा छ) ङकारको इत्संज्ञा हुन्छ । "अनुदात्तङितः"ले आत्मनेपद हुन्छ । (सकर्मक अनिट)

**इङिकाविति**– इङ् धातु र इक् धातु अधि उपसर्ग नलागेसम्म प्रयुक्त हुँदैनन् ।

"पूर्वं धातुरुपसर्गेण युज्यते" पहिले धातु उपसर्गले युक्त हुन्छ, यो परिभाषा अनुसार धातुमा उपसर्ग पहिले नै लाग्दछ । साधन प्रक्रियामा भने धातु र प्रत्ययको काम गरिसकेपछि मात्र उपसर्गसँग सन्धि हुन्छ ।

**अधीते**– 'अधि+इ' धातुदेखि लट्, त, शप्, लुक्, एत्व 'अधि+इते', दीर्घ, 'अधीते' सिद्ध भयो ।

**अधीयाते**– 'अधि+इ+आताम्', शप् लुक् इयङ्, 'अधि+इयाताम्', एत्व, 'अधि+इयाते', दीर्घ 'अधीयाते' सिद्ध भयो ।

**अधीयते**– 'अधि+इ+झ', अत्, 'अधि+इ+अत', इयङ्, 'अधि+इयत', एत्व, 'अधि+इयते', दीर्घ 'अधीयते' सिद्ध भयो । बाँकी रूप- अधीषे, अधीयाथे, अधीध्वे । अधीये, अधीवहे, अधीमहे ।

---

**५८५. गाङ् लिटि २।४।४९॥**

इङो गाङ् स्याल्लिटि । अधिजगे । अधिजगाते । अधिजगिरे । अध्येता । अध्येष्यते । अधीताम् । अधीयाताम् । अधीयताम् । अधीष्व । अधीयाथाम् । अधीध्वम् । अध्ययै । अध्ययावहै । अध्ययामहै । अध्यैत । अध्यैयाताम् । अध्यैयत । अध्यैथाः । अध्यैयाथाम् । अध्यैध्वम् । अध्यैयि । अध्यैवहि । अध्यैमहि । अधीयीत ।

---

**गाङिति**– इङ् धातुका स्थानमा गाङ् आदेश होस्, लिट्का विषयमा ।

**अधिजगे**– लिट् लकारको विवक्षामा इङ्का स्थानमा गा आदेश भयो । ङकारको इत्सञ्ज्ञा लोप भयो, गा धातु बन्यो । अधि उपसर्ग को पूर्व प्रयोग भयो । 'अधि+गा' धातुदेखि लिट्, त, एश्, 'अधिगा+ए', द्वित्व, 'अधि+गा+गा+ए' अभ्यासको ह्रस्व, 'अधि+गगा+ए', चुत्व, 'अधिजगा+ए', "आतो लोप इटि च"ले आकारको लोप भयो, 'अधिजगे' सिद्ध भयो । से, ध्वे, वहे, महे, मा क्रादिनियमले नित्य इट् हुने हुँदा लिट्मा सबै विभक्ति अजादि हुन्छन् र आकारको लोप हुन्छ । लिट्का सबै रूप तल दिइन्छ-

| **इङ् लिट्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अधिजगे | अधिजगाते | अधिजगिरे |
| | मध्यमपुरुष | अधिजगिषे | अधिजगाथे | अधिजगिध्वे |
| | उत्तमपुरुष | अधिजगे | अधिजगिवहे | अधिजगिमहे |

**अध्येता**– 'अधि+इ+लुट', त, तासि प्रत्यय "आर्धधातुकस्येड्०"ले इट् पाएको "एकाच०"ले निषेध, गुण, 'अधि+ए+तास्+त', डा टिलोप, यण्, 'अध्येता' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध हुन्छन् । लुट्का सबै रूप तल दिइन्छ-

| **इङ् लुट्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अध्येता | अध्येतारौ | अध्येतारः |
| | मध्यमपुरुष | अध्येतासे | अध्येतासाथे | अध्येताध्वे |
| | उत्तमपुरुष | अध्येताहे | अध्येतास्वहे | अध्येतास्महे |
| **इङ् लृट्-** | प्रथमपुरुष | अध्येष्यते | अध्येष्येते | अध्येष्यन्ते |
| | मध्यमपुरुष | अध्येष्यसे | अध्येष्येथे | अध्येष्यध्वे |
| | उत्तमपुरुष | अध्येष्ये | अध्येष्यावहे | अध्येष्यामहे |

"**अध्येष्यते च य इमं धर्म्यं संवादमावयोः**" (भगवद्गीता)

**लोट्का**– अधीताम् आदि रूप मूलमा छन् । प्रथमपुरुष र मध्यमपुरुषमा सामान्य प्रक्रिया छ । उत्तम पुरुषमा दिग्दर्शन गराइन्छ–

**अध्ययै**- 'अधि+इ+आ+ए' यहाँ ऐ आदेश वृद्धि भयो, 'अधि+इ+ऐ' गुण, अयादेश 'अधि+अयै', यण् भयो, 'अध्ययै' सिद्ध भयो । यस्तै प्रकारले अध्ययावहै, अध्ययामहै यी रूप पनि सिद्ध हुन्छन् ।

**अध्यैत**– 'अधि+इ+लङ्', आट् आगम 'अधि+आ+इ+ल्', वृद्धि त, शप्, लुक् 'अधि+ऐत' यण् भयो, 'अध्यैत' सिद्ध भयो ।

**अध्यैयाताम्**– 'अधि+आ+इ+आताम्', इयङ्, 'अधि+आ+इयाताम्' वृद्धि यण् भयो, 'अध्यैयाताम्' सिद्ध भयो । यस्तै प्रकारले अन्यत्र पनि अजादि विभक्तिमा इयङ् गरेपछि मात्र "आटश्च"ले वृद्धि हुन्छ । समग्र रूप मूलमा नै छन् ।

**अधीयीत**– 'अधि+इ'देखि विधिलिङ्, त, सीयुट्, इट् आगम, सुट् आगम,

अधीयीयाताम् । अधीयीरन् । अध्येषीष्ट ॥

**५८६. विभाषा लुङ्लृङोः २।४।५०॥**

इङो गाङ् वा स्यात् ॥

**५८७. गाङ्कुटादिभ्योऽञ्णिन्ङित् १।२।१॥**

गाङादेशात्कुटादिभ्यश्च परेऽञ्णितः प्रत्यया ङितः स्युः ॥

**५८८. घुमास्थागापाजहातिसां हलि ६।४।६६॥**

एषामात ईत्स्याद्धलादौ क्ङित्यार्धधातुके । अध्यगीष्ट,

---

'अधि+इ+सीय्+स्+त' दुवै सकारको "लिङः सलोपो०"ले लोप, 'अधि+इ+ईय्' त यकारको लोप 'अधि+इ+ईत' धातुका इकारका स्थानमा गुण पाएमा ङित्त्वात् निषेध भयो, "अचि श्नुधातुभ्रुवां०"ले इयङ्, 'अधि+इयीत' दीर्घ, 'अधीयीत' सिद्ध भयो । यस्तै प्रकारले अधीयीयाताम् इत्यादि रूप पनि हुन्छन् । विधिलिङ्का सबै रूप-

| इङ् वि.लि.- पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अधीयीत | अधीयीयाताम् | अधीयीरन् |
| मध्यमपुरुष | अधीयीथाः | अधीयीयाथाम् | अधीयीध्वम् |
| उत्तमपुरुष | अधीयीय | अधीयीवहि | अधीयीमहि |

**आशीर्लिङ्मा**– सकारको लोप हुँदैन । इङ् धातु अनिट् हुनाले इट् आगम पनि नहुने हुँदा अजादि प्रत्यय पर हुँदैन र इयङ् हुँदैन "सार्वधातुका०"ले गुण हुन्छ । सबै रूप तल दिइन्छ-

| इङ् आ.लि.- पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अध्येषीष्ट | अध्येषीयास्ताम् | अध्येषीरन् |
| मध्यमपुरुष | अध्येषीष्ठाः | अध्येषीयास्थाम् | अध्येषीढ्वम् |
| उत्तमपुरुष | अध्येषीय | अध्येषीवहि | अध्येषीमहि |

**विभाषेति**– लुङ् र लृङ्को विषयमा इङ् धातुका स्थानमा गाङ् आदेश विकल्पले होस् ।

**गाङ्कुटेति**– आदेश भएको गाङ् धातु र कुटादि धातुदेखि पर रहेका ञकार णकारको इत्सञ्ज्ञा नहुने प्रत्यय ङित् होऊन् ।

**घुमास्थेति**– घुसंज्ञक धातु र मा धातु, स्था धातु, गा धातु, पा धातु, जहाति रूप हुने हा धातु, सा धातुका आकारका स्थानमा दीर्घ ईकार होस्, हल् आदिमा हुने कित्, ङित् आर्धधातुकसंज्ञक प्रत्यय पर भएमा ।

**अध्यगीष्ट**– लुङ्का विवक्षामा इङ् धातुका स्थानमा "विभाषा लुङ्लृङोः"ले वैकल्पिक गाङ् आदेश भयो । 'अधि+गा'धातुदेखि लुङ् आयो, अट् आगम भयो, 'अधि+अगा+ल्' त, च्लि, सिच्, इट् आगमको निषेध, 'अधि+अगास्+त' भएपछि, सिच्को "गाङ्कुटादिभ्यो०"ले ङित्त्व भयो, "घुमास्थागापा०"ले आकारका स्थानमा ईकार भयो, 'अधि+अगीस्त', यण्, 'अध्यगीस्त', षत्व, ष्टुत्व भयो, 'अध्यगीष्ट' सिद्ध भयो । गाङ् आदेश भएका पक्षमा सबै रूप तल दिइन्छ-

| इङ् लुङ्.- पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अध्यगीष्ट | अध्यगीषाताम | अध्यगीषत |
| मध्यमपुरुष | अध्यगीष्ठाः | अध्यगीषाथाम् | अध्यगीढ्वम् |
| उत्तमपुरुष | अध्यगीषि | अध्यगीष्वहि | अध्यगीष्महि |

अध्यैष्ट । अध्यगीष्यत, अध्यैष्यत ॥ दुह प्रपूरणे ॥ २१॥

**अध्यैष्ट**– गाङ् आदेश नभएका पक्षमा 'अधि+आ+इस्+त', वृद्धि, षत्व, 'अधि+ऐष्ट', यण्, 'अध्यैष्ट' सिद्ध भयो । गाङ् आदेश नभएका पक्षमा– लुङ्का सबै रूप तल दिइन्छ-

| इङ् लुङ्- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अध्यैष्ट | अध्यैषाताम् | अध्यैषत |
| | मध्यमपुरुष | अध्यैष्ठाः | अध्यैषाथाम् | अध्यैढ्वम् |
| | उत्तमपुरुष | अध्यैषि | अध्यैष्वहि | अध्यैष्महि |

**अध्यगीष्यत**– लृङ् लकारका विषयमा इङ्का स्थानमा गाङ् आदेश विकल्पले भयो, 'अधि+गा' धातुदेखि लृङ्, अट्आगम, 'अधि+अगा+ल्', त, स्य प्रत्यय, 'अधि+अगा+स्य+त' यहाँ "गाङ्कुटादिभ्यो०"ले स्यको ङित्व भयो, "घुमास्थागापाजहातिसां०"ले गाका आकारका स्थानमा ईत्व, षत्व, 'अधि+अगीष्यत', यण् भयो, 'अध्यगीष्यत' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध गर्नू । गाङ् आदेश भएका पक्षमा लृङ्का सबै रूप तल दिइन्छ-

| इङ् लृङ्- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अध्यगीष्यत | अध्यगीष्येताम् | अध्यगीष्यन्त |
| | मध्यमपुरुष | अध्यगीष्यथाः | अध्यगीष्येथाम् | अध्यगीष्यध्वम् |
| | उत्तमपुरुष | अध्यगीष्ये | अध्यगीष्यावहि | अध्यगीष्यामहि । |

गाङ् आदेश नभएका पक्षमा– लृङ्का सबै रूप तल दिइन्छ-

| इङ् लृङ्- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अध्यैष्यत | अध्यैष्येताम् | अध्यैष्यन्त |
| | मध्यमपुरुष | अध्यैष्यथाः | अध्यैष्येथाम् | अध्यैष्यध्वम् |
| | उत्तमपुरुष | अध्यैष्ये | अध्यैष्यावहि | अध्यैष्यामहि |

**दुह** धातु पूर्ण गर्नु, दुहनु अर्थमा छ। अकारको इत्संज्ञा हुन्छ अ, स्वरित हुनाले "स्वरितञितः०"ले क्रियाको फल कर्तामा गएमा आत्मनेपद र क्रियाको फल कर्तामा नगएमा परस्मैपद हुन्छ। (अनिट् सकर्मक )

**लट्मा**– यसको रूपसिद्धिमा "दादेर्धातोर्घः", "झषस्तथोर्धोधः" "एकाचो वशोभष०" "झलां जश् झशि" खरि च" यी सूत्रहरू लाग्दछन् । अर्थात् सिप्मा र थास्को सेमा अनि ध्वम्मा घत्व, धत्व, भष्भाव, हुन्छ । तिप्, तस्, थस्, थमा, घत्व, धत्व र जश्त्व हुन्छ । अन्यत्र विशेष कार्य छैन ।

अरू लकारमा पनि प्राप्तिस्थल हेरेर यी सूत्रहरूद्वारा हुने कार्य गरी रूप सिद्ध गर्नुपर्छ उपर्युक्त सूत्रहरूको प्राप्ति स्थल, तिप्, तस्, सिप्, थस्, थ र त, थास्, ध्वम्, यी विभक्ति मात्र हुन् सिप् र थास् भएपछि मात्र "एकाचो बशो भष्०"ले भष्भाव चर्त्व षत्व क्षत्व पनि हुन्छ । ध्वम्मा जश्त्व भएर धातुका घकारको गकार हुन्छ । भष्भाव भएपछि चर्त्व, षत्व र ककार र षकार संयोग भएर क्षत्व पनि हुन्छ । झि, मिप्, वस्, मस्, आताम्, झ, इट्, वहि, महिमा घत्व, धत्व, जश्त्व, भष्भाव, चर्त्व केही हुँदैन । लिट् लकारमा इट् आगम हुने स्थलमा क्रादिनियमले नित्य इट् हुन्छ ।

**लुट्मा**– अनिट् धातु हुनाले इट् हुँदैन । घत्व, धत्व, जश्त्व भएर दोग्धा, दोग्धारौ, आदि रूप हुन्छन् ।

दोग्धि । दुग्धः । दुहन्ति । धोक्षि । दुग्धे । दुहाते । दुहते । धुक्षे । दुहाथे । धुग्ध्वे । दुहे । दुह्वहे । दुह्महे । दुदोह, दुदुहे ।

---

**लृट् र लृङ्मा**– (स्यको इट् निषेध हुन्छ, घत्व, धत्व, भष्भाव, चर्त्व, षत्व, क्षत्व, भएर हुन्छ ।

लोट्, परस्मैपदमा सकार ध्व शब्द पर नपाइने हुनाले भष्भाव कहीं पनि हुँदैन । आत्मनेपदमा थास्, से, स्व भएपछि भष्भाव आदि हुन्छ । ध्वम्मा पनि भष्भाव हुन्छ ।

**लङ्मा परस्मैपदमा**– अदोघ् भएपछि पदान्त हुनाले तिप्मा र सिप्मा घत्व भष्भाव, जश्त्व, चर्त्व हुन्छ । आत्मनेपदमा ध्वम्मा भष्भाव हुन्छ ।

**विधिलिङ्मा**– आत्मनेपद परस्मैपद दुवैमा घत्व धत्व भष्भाव आदि कार्य छैनन् ।
**आशीर्लिङ्का**– परस्मैपदमा पनि विशेष कार्य छैन ।

**आशीर्लिङ**– आत्मनेपदमा सीयुट्को सकार पर हुनाले सबै पुरुषवचनमा घत्व, भष्भाव, चर्त्व, कत्व, षत्व, क्षत्व हुन्छन् । लुङ्मा क्सप्रत्यय भएको पक्षमा पनि परस्मैपद आत्मनेपद दुवैमा घत्व, भष्भाव, चर्त्व, कत्व, षत्व, क्षत्व यी कार्य हुन्छन् । क्सको लुक्, लोप आदि विशेषकार्य छन् । त्यहीं प्रकरणमा बताइनेछ । अब लट् आदि लकारका रूपहरूको सिद्धि प्रक्रिया क्रमशः तल देखाइन्छ ।

**दोग्धि**– दुह्धातुदेखि लट्, तिप्, शप्, लुक्, "पुगन्त०"ले गुण 'दोह्+ति' "दादेर्धातोर्घः"ले घत्व, "झषस्तथोः०"ले तिका तकारका स्थानमा धकार, 'दोघ्+धि' जश्त्व, 'दोग्धि' सिद्ध भयो ।

**दुग्धः**– दुह लट्, तस्, शप्, लुक्, कित्वाद् गुणनिषेध, घत्व, धत्व भयो, 'दुग्धः' सिद्ध भयो ।

**दुहन्ति**– दुह् झि, शप्, लुक्, अन्त् आदेश, कित्वाद् गुणनिषेध भयो, 'दुहन्ति' सिद्ध भयो ।

**धोक्षि**– दुह सि, शप्, लुक्, गुण, घत्व, सकार पर हुनाले "एकाचो बशो भष्०"ले भष्भाव, चर्त्व, 'धोक्+सि' षत्व, क्षत्व, 'धोक्षि' सिद्ध भयो ।

**दुग्धः**– दुह् थस्, घत्व, धत्व, 'दुग्धः' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि हुन्छन् ।

बाँकी रूप- दुग्ध । दोह्मि, दुह्वः, दुह्मः ।

**दुग्धे**– दुह लट्, आत्मनेपद त 'दुह्+त' शप् लुक् तको एत्व, घत्व, धत्व, जश्त्व भयो, 'दुग्धे' सिद्ध भयो ।

**दुहाते**– 'दुह्+आताम्', 'दुह्+आते' कित्वाद गुणनिषेध, 'दुहाते' सिद्ध भयो । यस्तै प्रकारले 'दुहते' पनि हुन्छ ।

**धुक्षे**– 'दुह्+से', कित्वाद् गुणनिषेध, घत्व, धत्व, भष्भाव, चर्त्व, षत्व, क्षत्व, 'धुक्षे' सिद्ध भयो, । आथाम्मा दुहाथे हुन्छ ।

**धुग्ध्वे**– 'दुह+ध्वे', गुणनिषेध, घत्व, ध्व शब्द पर भएकोले भष्भाव, जश्त्व भयो, 'धुग्ध्वे' सिद्ध भयो ।

**दुहे**– इट्मा 'दुह्+इ', 'दुह+ए', दुहे हुन्छ ।

**दुहवहे/दुहमहे**– कित्वाद् गुणनिषेध हुन्छ विशेष प्रक्रिया केही छैन ।

**दुदोह**– दुह् लिट्, तिप्, णल्, द्वित्व, हलादिशेष, "पुगन्तलघूपधस्य च"ले गुण भयो, 'दुदोह' सिद्ध भयो । अतुस् उस्मा दुदुहतुः, दुदुहुः हुन्छ । यहाँ कित्वाद् गुणनिषेध हुन्छ ।

**दुदोहिथ**– 'दुह+थ' "आर्धधातुकस्येड्०"ले पाएको इट् "एकाच०"ले निषेध भएपछि क्रादिनियमले नित्य इट्, द्वित्वादि, गुण भयो, 'दुदोहिथ' सिद्ध भयो । यस्तै व, म, मा नित्य इट् व,म, कित् हुनाले गुण निषेध हुन्छ । दुदुहिव । दुदुहिम यी रूप हुन्छन् ।

**दुदुहे**– 'दुह्+लिट्' आत्मनेपद त, "लिटस्तझयोः०"ले एश्, द्वित्वादि, गुणनिषेध भयो, 'दुदुहे' सिद्ध

दोग्धासि, दोग्धासे । धोक्ष्यति, धोक्ष्यते । दोग्धु, दुग्धात् । दुग्धाम् । दुहन्तु । दुग्धि, दुग्धात् । दुग्धम् । दुग्ध । दोहानि । दोहाव । दोहाम । दुग्धाम् । दुहाताम् । दुहताम् । धुक्ष्व । दुहाथाम् । धुग्ध्वम् । दोहै । दोहावहै । दोहामहै । अधोक् ।

---

भयो । आताम्मा र झमा विशेष कार्य छैन । दुदुहाते/दुदुहिरे यसै प्रकारले यी दुई रूप हुन्छन् ।

**दुदुहिढ्वे**– लिट्को थास्मा 'दुह्+से', क्रादिनियमले नित्य इट्, द्वित्वादि भयो, 'दुदुहिषे' सिद्ध भयो ।

**दुदुहिढ्वे/दुदुहिध्वे**–लिट्को ध्वम्मा 'दुह+ध्वे' क्रादिनियमले नित्य इट्, "विभाषेटः"ले ढत्व विकल्प भयो, 'दुदुहिढ्वे/दुदुहिध्वे', दुई रूप हुन्छन् । उत्तमपुरुष इट्मा दुदुहे हुन्छ । वहि महिमा पूर्ववत् नित्य इट् हुन्छ, दुदुहिवहे, दुदुहिमहे यी रूप हुन्छन् ।

**दोग्धा**– 'दुह+लोट्', ति, तासि प्रत्यय, इट् निषेध गुण डा आदेश, टिलोप भयो, 'दोग्धा' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध हुन्छन् । आत्मनेपदमा पनि पूर्ववत् प्रक्रिया हुन्छ ।

**धोक्ष्यति**– 'दुह+लृट्', ति, स्य प्रत्यय इट्को निषेध, गुण, घत्व, 'दोघ्+स्यति', भष्भाव, 'धोघ्+स्यति', "खरि च"ले चर्त्व, 'धोक्+स्यति', षत्व, क्षत्व भयो, 'धोक्ष्यति' सिद्ध भयो । यस्तै प्रकारले, धोक्ष्यतः धोक्ष्यन्ति आदि रूप बन्दछन् । आत्मनेपदमा पनि त्यही प्रक्रियाद्वारा धोक्ष्यते, धोक्ष्येते, धोक्ष्यन्ते आदि रूप हुन्छन् ।

**दोग्धु/दुग्धात्**– दुह् लोट्, ति, उत्व, शप्, लुक्, विध्यादिअर्थमा तातङ् भएन गुण भयो, घत्व, धत्व भयो, 'दोग्धु' सिद्ध भयो । आशीः अर्थमा वैकल्पिक तातङ् ङित्वाद् गुणनिषेध, घत्व, धत्व भयो, 'दुग्धात्' सिद्ध भयो । तातङ् नभएको पक्षमा गुण, घत्व, धत्व भएर 'दोग्धु' सिद्ध भयो । समष्टि रूपमा विधिलिङ् एवं आशीर्लिङ्को तिप्मा दोग्धु/दुग्धात् दुई रूप भए । यस्तै प्रकारले तस्मा दुग्धाम् भयो ।

**दुहन्तु**– लोट् झि, दुह अन्तु, ङित्वाद्, गुणनिषेध भयो, 'दुहन्तु' सिद्ध भयो ।

**दुग्धि/दुग्धात्**– 'दुह्+हि', "हु झल्भ्यो हेः०"ले धि, घत्व, जश्त्व भयो, 'दुग्धि' सिद्ध भयो । आशीर्वाद अर्थमा हिका स्थानमा तात्, घत्व, धत्व, जश्त्व भयो, 'दुग्धात्' सिद्ध भयो ।

**दोहानि, दोहाव, दोहाम**– दुह् लोट्, मिप्, वस्, मस्मा 'दुह्+आनि', 'दुह्+आव', 'दुह्+आम', यहाँ आट्मा पित्व हुनाले गुण भयो, 'दोहानि', 'दोहाव', 'दोहाम', यी रूप सिद्ध भए ।

**दुग्धाम्**– दुह् लोट्, एकवचनमा 'दुह्+त', "टित आत्मनेपदानां०"ले एत्व, "आमेतः"ले आम् ङित्वाद्, गुणनिषेध 'दुह्+ताम्' घत्व, धत्व, जश्त्व, 'दुग्धाम्' सिद्ध भयो । दुहाताम्, दुहताम् यहाँ, विशेष कार्य छैन ।

**धुक्ष्व**– लोट् थास्मा दुह् लोट्, थास्, से "सवाभ्यां वामौ"ले एकारको वकार शप्, लुक् 'दुह+स्व' भएपछि, घत्व, भष्भाव, 'धुघ्+स्व' चर्त्व, षत्व, क्षत्व भयो, 'धुक्ष्व' सिद्ध भयो । दुहाथाम् यहाँ विशेष कार्य छैन ।

**धुग्ध्वम्**– लोट् ध्वम्मा 'दुह्+ध्वम्', यहाँ घत्व, भष्भाव 'धुघ्+ध्वम्' "झलां जश् झशि"ले जश्त्व, 'धुग्ध्वम्' सिद्ध भयो ।

**दोहै, दोहावहै, दोहामहै**– 'दुह्+ऐ', 'दुह्+आवहै', 'दुह्+आमहै' यस्तो स्थितिमा आट्मा पित्व हुनाले सर्वत्र गुण भयो, 'दोहै', 'दोहावहै', 'दोहामहै' यी रूप सिद्ध भए ।

**अधोक्**– लङ् परस्मैपदमा– 'अदुह्+ति' यहाँ तिका इकारको "इतश्च"ले लोप सकारको "झलो झलि"ले सकारको लोप भयो, शप् लुक् तकारको "हल्ङ्याब्भ्यो०"ले लोप, गुण 'अदोह्' भयो । "प्रत्ययलोपे०" लगाएर पदसंज्ञा भएपछि घत्व र भष्भाव, 'अधोघ्', "झला जशोऽन्ते"ले जश्त्व "वाऽवसाने"ले चर्त्व, 'अधोक्' चर्त्व नभएमा 'अधोग्' यी दुई रूप भए । सिप्मा पनि यही प्रक्रिया हुन्छ अधोक्, अधोग् दुई रूप हुन्छन् । ताम्, तम् र तमा घत्व, धत्व, जश्त्व हुन्छ ।

---

अदुग्धाम् । अदुहन् । अदोहम् । अदुग्ध । अदुहाताम् । अदुहत । अधुग्ध्वम् । दुह्यात्, दुहीत ॥

**५८९. लिङ्सिचावात्मनेपदेषु १।२।११॥**

इक्समीपाद्धलः परौ झलादी लिङ्सिचौ कितौ स्तस्तङि । धुक्षीष्ट ॥

---

अजादि विभक्तिमा र वहि महिमा विशेष कार्य छैन । रूपहरू तल दिइन्छन्-

**दुह् लङ्.पर.-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अधोक्/ग् | अदुग्धाम् | अदुहन् |
| मध्यमपुरुष | अधोक्/ग् | अदुग्धम् | अदुग्ध |
| उत्तमपुरुष | अदोहम् | अदुह्व | अदुह्म |

**अदुग्ध-** दुह् लङ्, आत्मनेपद प्र.पु. एकवचन त, च्लि, सिच्, इट्निषेध, "झलो झलि"ले सकारको लोप भयो, 'अदुह्+त' यहाँ घत्व, धत्व, जश्त्व भयो, 'अदुग्ध' सिद्ध भयो । यस्तै थास्मा पनि सकारको लोप भएपछि, घत्व, धत्व हुन्छ । ध्वम्मा घत्व, धत्व भएपछि भष्भाव हुन्छ । अजादि विभक्तिमा र वहि महिमा वर्णमेलनबाहेक अरू प्रक्रिया छैन ।

**दुह् लङ्.आ.-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अदुग्ध | अदुहाताम् | अदुहत |
| मध्यमपुरुष | अदुग्धाः | अदुहाथाम् | अधुग्ध्वम् |
| उत्तमपुरुष | अदुहि | अदुह्वहि | अदुह्महि |

**विधिलिङ् परस्मैपदमा-** यासुट्का सकारको र आत्मनेपदमा- सीयुट्, सुट् दुवैका सकारको लोप हुन्छ । अरू विशेष प्रक्रिया छैन, रूप तल दिइन्छ ।

**दुह् लङ्.पर.-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | दुह्यात् | दुह्याताम् | दुह्युः |
| मध्यमपुरुष | दुह्याः | दुह्यातम् | दुह्यात |
| उत्तमपुरुष | दुह्याम् | दुह्याव | दुह्याम । |

**दुह् वि.लि.आ.-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | [८५] दुहीत | दुहीयाताम् | दुहीरन् |
| मध्यमपुरुष | दुहीथाः | दुहीयाथाम् | दुहीध्वम् |
| उत्तमपुरुष | दुहीय | दुहीवहि | दुहीमहि |

**आशीर्लिङ् परस्मैपदमा-** यासुट्का सकारको लोप हुँदैन । अरू विशेष प्रक्रिया छैन । रूप तल दिइन्छ ।

**दुह् आ.लि.पर.-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | दुह्यात् | दुह्यास्ताम् | दुह्यासुः |
| मध्यमपुरुष | दुह्याः | दुह्यास्तम् | दुह्यास्त |
| उत्तमपुरुष | दुह्यासम् | दुह्यास्व | दुह्यास्म |

**लिङ्सिचाविति-** इक्का नजिकमा रहेका हल् देखि पर रहेका झल् आदिमा हुने लिङ् र सिच् कित् होऊन् तङ्का विषयमा ।

**धुक्षीष्ट-** दुह् आशीर्लिङ् आत्मनेपद 'दुह्+ल्+त', सीयुट्, 'दुह्+सीय्+स्+त' यहाँ दुह्का

---

८५ विधिलिङ् सार्वधातुक हुनाले "सार्वधातुकमपित्"ले 'ईत'को ङित्त्व हुन्छ ।

**५९०. शल इगुपधादनिटः क्सः ३।१।४५॥**

इगुपधो यः शलन्तस्तस्मादनिटश्च्लेः क्सादेशः स्यात् । अधुक्षत् ॥

**५९१. लुग्वा दुहदिहलिहगुहामात्मनेपदे दन्त्ये ७।३।७३॥**

एषां क्सस्य लुग्वा स्याद्दन्त्ये तङि । अदुग्ध, अधुक्षत ॥

---

उकारको "लिङ्सिचावात्मनेपदेषु"ले इक्का नजिकमा रहेको हल्देखि पर झलादि लिङ् छ सीय स् त, तङ्को विषय पनि हो र 'सीय्+स्+त' यो कित् भयो, "पुगन्तलघूपधस्य च"ले पाएको गुण "क्ङिति च" ले निषेध भयो घत्व, भष्भाव, भयो, 'धुघ्+सीय्+स्+त' चर्त्व, क्षत्व, 'धुक्षीय्+स्+त' सकारको लोप, यकारको लोप, षत्व, ष्टुत्व, 'धुक्षीष्ट' सिद्ध भयो ।

यस्तै प्रकारले सबै पुरुषवचनमा गुणनिषेध घत्व, भष्भाव आदि प्रक्रिया हुन्छन् । रूप तल दिइन्छ–

| दुह् आ.लि.आ– | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | धुक्षीष्ट | धुक्षीयास्ताम् | धुक्षीरन् |
| | मध्यमपुरुष | धुक्षीष्ठाः | धुक्षीयास्थाम् | धुक्षीध्वम् |
| | उत्तमपुरुष | धुक्षीय | धुक्षीवहि | धुक्षीमहि |

**शल इति–** इक् उपधामा हुने जो शल्प्रत्याहारान्त धातु छ । त्यस्ता अनिट् धातुदेखि पररहेका च्लिका स्थानमा क्स आदेश होस् ।

**अधुक्षत्–** दुह् धातुदेखि लुङ्, अट्, परस्मैपद ति, च्लि प्रत्यय, 'अदुह्+च्लि+ति', च्लिका स्थानमा "च्लेः सिच्"ले पाएको सिच्लाई बाधेर इक् उपधामा हुने शल् (हकार) अन्तमा हुने अनिट् दुह्धातुदेखि पररहेको च्लिका स्थानमा "शल इगुपधादनिटः०"ले क्स आदेश भयो, ककारको इत्संज्ञा लोप भयो । 'अदुह्+स्+ति' समा कित्व हुनाले गुणनिषेध भयो, "दादेर्धातोर्घः"ले हकारका स्थानमा घकार भयो, भष्भाव, चर्त्व, षत्व, क्षत्व भयो, 'अधुक्षति' यहाँ तिका इकारको "इतश्च"ले लोप भयो, 'अधुक्षत्' सिद्ध भयो । यस्तै प्रकारले अधुक्षताम् अधुक्षन् आदि रूप सिद्ध हुन्छन् । सबै रूप तल दिइन्छ-

| दुह् लुङ्.प.- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अधुक्षत् | अधुक्षताम् | अधुक्षन् |
| | मध्यमपुरुष | अधुक्षः | अधुक्षतम् | अधुक्षत |
| | उत्तमपुरुष | अधुक्षम् | अधुक्षाव | अधुक्षाम |

**लुग्वेति–** दुह् दिह् लिह् गुह् यी धातुसम्बन्धी क्स प्रत्ययको लुक् होस्, दन्तस्थानी वर्ण आदिमा हुने तङ् पर भएमा ।

**अदुग्ध, अधुक्षत–** दुह् लुङ्, अट्, आत्मनेपद त, च्लि प्रत्यय, क्स आदेश भएपछि, 'अदुह्+स्+त', यहाँ "[८६] लुग्वा दुहदिहलिहगुहां०"ले क्सको वैकल्पिक लुक् भयो, घत्व, धत्व, जश्त्व, भयो, 'अदुग्ध' सिद्ध भयो । लोप नभएको पक्षमा घत्व भयो, सकार पर हुनाले भष्भाव, चर्त्व, षत्व, क्षत्व, भयो, 'अधुक्षत' सिद्ध भयो । थास्, ध्वम् र वहिमा दन्त्य तङ् परहुनाले क्सको वैकल्पिक लुक् हुन्छ । लुक् भएको पक्षमा थास् र वहिमा भष्भाव हुँदैन । लुक् नभएको पक्षमा भष्भाव हुन्छ । ध्वम्मा भने दुवै

---

८६ लुक्, श्लु र लुप् सर्वादेश हुन् यिनको प्रवृत्ति भएको ठाउँमा "अलोन्त्यस्य"आदि परिभाषा सूत्र लाग्दैनन् । "क्सस्याचि" यो सूत्रमा लोपप्रकरण छँदैछ । यो उत्तर सूत्रमा लुक् ग्रहण गरिएको क्सको पूरै लोप गर्न निमित्त हो ।

**५९२. क्सस्याचि ७।३।७२॥**

अजादो तङि क्सस्य लोपः । अधुक्षाताम् । अधुक्षन्त । अदुग्धाः, अधुक्षथाः । अधुक्षथाम् । अधुग्ध्वम्, अधुक्षध्वम् । अधुक्षि । अदुह्वहि, अधुक्षावहि । अधुक्षामहि । अधोक्ष्यत ॥ एवं **दिह** उपचये ॥२२॥ **लिह** आस्वादने ॥२३॥

लेढि । लीढः । लिहन्ति । लेक्षि ।

---

पक्षमा भष्भाव हुन्छ । महि यो दन्त्यादि तङ् नहुनाले क्सको लुक् हुँदैन, यौटै रूप हुन्छ ।

**क्सस्येति**– अच् आदिमा हुने तङ् पर भएमा क्सको लोप होस् । "अलोऽन्त्यस्य" लगाएर सका अकारको लोप हुन्छ ।

**अधुक्षाताम्**– 'अदुह्+स्+आताम्' यहाँ "क्सस्याचि"ले "अलोऽन्त्यस्य" लगाएर अकारको लोप भयो, घत्व, भष्भाव, चर्त्व, षत्व, क्षत्व भयो, 'अधुक्षाताम्' सिद्ध भयो । यसैगरी सम्पूर्ण अजादि विभक्तिमा क्सका अकारको लोप हुन्छ र भष्भाव पनि हुन्छ । हलादि विभक्तिको प्रक्रिया माथि दिएको छ । सबै रूप तल दिइन्छ-

| **दुह् लुङ् आ.-पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | अदुग्ध/अधुक्षत | अधुक्षाताम् | अधुक्षन्त |
| मध्यमपुरुष | अदुग्धाः/अधुक्षथाः | अधुक्षाथाम् | अधुग्ध्वम्/अधुक्षध्वम् |
| उत्तमपुरुष | अधुक्षि | अदुह्वहि/अधुक्षावहि | अधुक्षामहि |

**अधोक्ष्यत्**– दुह् लृङ्, अट्, ति, स्य, इट्को निषेध, गुण, घत्व, भष्भाव, चर्त्व, षत्व, क्षत्व भयो, 'अधोक्ष्यत्' सिद्ध भयो । यस्तै प्रकारले 'अधोक्ष्यताम्' आदि रूप हुन्छन् ।

**अधोक्ष्यत**– दुह् लृङ्, अडागम, त, स्य आदि पूर्ववत् भयो, 'अधोक्ष्यत' सिद्ध भयो । यस्तै प्रकारले अधोक्ष्येताम् आदि रूप पनि बन्दछन् ।

**दिह** धातु बढ्नु अर्थमा छ अकार स्वरित हो, इत्संज्ञा हुन्छ । स्वरितेत् हुनाले उभयपदी धातु हो । (अनिट् अकर्मक) देग्धि, दिग्धः, दिहन्ति । दिग्धे, दिहाते, दिहते । इत्यादि रूप हुन्छन् । यो दिह् धातुका रूप सबै लकारमा दुह् धातुका जस्तै हुन्छन् ।

**लिह्** धातु चाट्नु अर्थमा छ । अकारको इत्संज्ञा हुन्छ । यो पनि स्वरितेत् हुनाले उभयपदी धातु हो । (अनिट् सकर्मक)

**लेढि**– लिह् लट्, तिप्, शप्, लुक् 'लिह्+ति', गुण 'लेह्+ति' "हो ढः"ले हकारको ढकार 'लेढ्+ति', धत्व, 'लेढ्+धि', ष्टुत्व, 'लेढ्+ढि' "ढ्रलोपे पूर्वस्य दीर्घोऽणः"ले ढलोप भयो, 'लेढि' सिद्ध भयो ।

**लीढः**– 'लिह्+तस्', शप्, लुक्, ढत्व, धत्व ष्टुत्व, ढलोप, दीर्घ, 'लीढस्' रुत्व, विसर्ग भयो, 'लीढः' सिद्ध भयो ।

**लेक्षि**– 'लिह्+सि' ढत्व, "षढोःकः सि"ले कत्व, षत्व, क्षत्व भयो, 'लेक्षि' सिद्ध भयो ।

| **लिह् लट् पर.-पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | लेढि | लीढः | लिहन्ति |
| मध्यमपुरुष | लेक्षि | लीढः | लीढ |
| उत्तमपुरुष | लेह्मि | लिह्वः | लिह्मः |

लीढे । लिहाते । लिहते । लिक्षे । लिहाथे । लीढ्वे । लिलेह, लिलिहे । लेढासि, लेढासे । लेक्ष्यति, लेक्ष्यते । लेढु । लीढाम् । लिहन्तु । लीढि । लेहानि । लीढाम् ।

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| लिह् लट् आ.- | प्रथमपुरुष | लीढे | लिहाते | लिहते |
| | मध्यमपुरुष | लिक्षे | लीहाथे | लीढ्वे |
| | उत्तमपुरुष | लिहे | लिह्वहे | लिह्महे |
| लिह् लिट् पर.- | प्रथमपुरुष | लिलेह | लिलिहतु: | लिलिहु: |
| | मध्यमपुरुष | लिलिहिथ | लिलिहथु: | लिलिह |
| | उत्तमपुरुष | लिलेह | लिलिहिव | लिलिहिम |
| लिह् लिट् आ.- | प्रथमपुरुष | लिलिहे | लिलिहाते | लिलिहिरे |
| | मध्यमपुरुष | लिलिहिषे | लिहिहाथे | लिलिहिढ्वे/लिलिहिध्वे |
| | उत्तमपुरुष | लिलिहे | लिलिहिवहे | लिलिहिमहे |

**लुट्**– परस्मैपद मध्यमपुरुष एकवचन लेढासि र आत्मनेपद, मध्यमपुरुषको एकवचनको रूप लेढासे हो । प्रथमपुरुषमा समान रूप हुने हुनाले भिन्नता देखाउन यी दुई रूप दिइएको हो ।

**लेक्ष्यति, लेक्ष्यते**– लिह् लृट्, ति, स्य प्रत्यय, गुण, ढत्व, कत्व, षत्व, क्षत्व भयो, 'लेक्ष्यति' सिद्ध भयो । यस्तै प्रकारले लेक्ष्यतः, लेक्ष्यन्ति आदि रूप हुन्छन् । आत्मनेपदमा पनि परस्मैपदवत् प्रक्रिया हुन्छ र 'लेक्ष्यते' यो रूप सिद्ध हुन्छ । यस्तै प्रकारले लेक्ष्येते, लेक्ष्यन्ते आदि रूप हुन्छन् ।

**लेढु/लीढात्**- लिह लोट्, परस्मैपद ति, शप्, लुक्, तिका इकारको उत्व, 'लिह्+तु' ढत्व, धत्व, ष्टुत्व, ढलोप भयो, 'लेढु' सिद्ध भयो । आशीर्वाद अर्थको लोट्मा तातङ् भएको पक्षमा 'लिह्+तात्', ढत्व, धत्व, ष्टुत्व, ढलोप, दीर्घ भयो, 'लीढात्' सिद्ध भयो ।

**लीढि/लीढात्**– 'लिह्+सि', हि, धि, ढत्व, ष्टुत्व, ढलोप, दीर्घ भयो, 'लीढि' सिद्ध भयो । हि अपित् हुनाले ङित् भयो र गुण भएन । तातङ् पक्षमा पूर्ववत्, 'लीढात्' सिद्ध भयो ।

**लेहानि**– आट्मा पित्त्व हुनाले गुण भयो, 'लेहानि' । यस्तै लेहाव, लेहाम यहाँ पनि आट्मा पित्व हुनाले गुण हुन्छ ।

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| लिह् लोट् पर.- | प्रथमपुरुष | लेढु/लीढात् | लीढाम् | लिहन्तु |
| | मध्यमपुरुष | लीढि/लीढात् | लीढम् | लीढ |
| | उत्तमपुरुष | लेहानि | लेहाव | लेहाम |

**लीढाम्**- लिह्, लोट् आत्मनेपद त, एत्व, आम्, 'लिह्+ताम्', ढत्व, धत्व, ष्टुत्व, ढलोप दीर्घ भयो, 'लीढाम्' सिद्ध भयो । अरू रूप आफै ऊह गर्नू । लिह् धातुका लोट् लकार आत्मनेपदका सबै रूप तल दिइन्छ-

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| लिह् लोट् आ.- | प्रथमपुरुष | लीढाम् | लिहाताम् | लिहताम् |
| | मध्यमपुरुष | लिक्ष्व | लिहाथाम् | लीढ्वम् |
| | उत्तमपुरुष | लेहै | लेहावहै | लेहामहै |

अलेट्, अलेड् । अलिक्षत्,

**अलेट्/अलेड्-** लिह् लङ्, अट्आगम, परस्मैपद एकवचन ति, शप्, लुक् 'अलिह्+ति', गुण, 'अलेह+ति', तिका इकारको लोप, त्को "हल्ङ्याब्भ्यो०"ले लोप, ढत्व, जश्त्व, चर्त्व भयो, 'अलेट्' सिद्ध भयो । चर्त्व नभएमा, 'अलेड्' सिद्ध भयो । यसरी यी दुई रूप भए । अरू विभक्तिमा पनि यसै गरी दुई दुई रूप हुन्छन् । सबै रूप तल दिइन्छ –

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| **लिह् लङ् पर-** | प्रथमपुरुष | अलेट्/अलेड् | अलीढाम् | अलिहन् |
| | मध्यमपुरुष | अलेट्/ड् | अलीढम् | अलीढ |
| | उत्तमपुरुष | अलेहम् | अलिह्व | अलिह्म |
| **लिह् लङ् आ.-** | प्रथमपुरुष | अलीढ | अलिहाताम् | अलिहत |
| | मध्यमपुरुष | अलीढाः | अलिहाथाम् | अलीढ्वम् |
| | उत्तमपुरुष | अलिहि | अलिह्वहि | अलिह्महि |
| **लिह् वि.लि.प.-** | प्रथमपुरुष | लिह्यात् | लिह्याताम् | लिह्युः |
| | मध्यमपुरुष | लिह्याः | लिह्यातम् | लिह्यात |
| | उत्तमपुरुष | लिह्याम् | लिह्याव | लिह्याम |
| **लिह् वि.लि.आ.-** | प्रथमपुरुष | लिहीत | लिहीयाताम् | लिहीरन् |
| | मध्यमपुरुष | लिहीथाः | लिहीयाथाम् | लिहीध्वम् |
| | उत्तमपुरुष | लिहीय | लिहीवहि | लिहीमहि |
| **लिह् आ.लि.प.-** | प्रथमपुरुष | लिह्यात् | लिह्यास्ताम् | लिह्यासुः |
| | मध्यमपुरुष | लिह्याः | लिह्यास्तम् | लिह्यास्त |
| | उत्तमपुरुष | लिह्यासम् | लिह्यास्व | लिह्यास्म |

**लिह् आशीर्लिङ् आत्मनेपदमा–** "लिङ् सिचावात्मनेपदेषु"ले लिङ्को कित्त्व भएपछि गुणनिषेध हुन्छ । ढत्व, कत्व, षत्व, क्षत्व हुन्छ ।

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| **लिह् आ.लि.आ-** | प्रथमपुरुष | लिक्षीष्ट | लिक्षीयास्ताम् | लिक्षीरन् |
| | मध्यमपुरुष | लिक्षीष्ठाः | लिक्षीयास्थाम् | लिक्षीढ्वम् |
| | उत्तमपुरुष | लिक्षीय | लिक्षीवहि | लिक्षीमहि |

लुङ्मा "शल इगुपधाद्"ले च्लिका स्थानमा क्स हुन्छ । रूप तल दिइन्छ-

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| **लिह् लुङ्.प.-** | प्रथमपुरुष | अलिक्षत् | अलिक्षताम् | अलिक्षन् |
| | मध्यमपुरुष | अलिक्षः | अलिक्षतम् | अलिक्षत |
| | उत्तमपुरुष | अलिक्षम् | अलिक्षाव | अलिक्षाम |

**लुङ् आत्मनेपदमा–** अजादि प्रत्यय पर भएमा क्सको अकारको लोप र हलादि महि बाहेक अरू दन्त्यादि विभक्ति पर भएमा वैकल्पिक लुक् हुन्छ ।

अलीढ । अलिक्षत । अलेक्ष्यत् । अलेक्ष्यत ॥ **ब्रूञ्** व्यक्तायां वाचि ॥२४॥

**५९३. ब्रुवः पञ्चनामादित आहो ब्रुवः ३।४।८४॥**

ब्रुवो लटस्तिबादीनां पञ्चानां णलादयः पञ्च वा स्युर्ब्रुवश्चाहादेशः । आह । आहतुः । आहुः ॥

**५९४. आहस्थः ८।२।३५॥**

झलि परे । चर्त्वम् । आत्थ । आहथुः ॥

**५९५. ब्रुव ईट् ७।३।९३॥**

ब्रुवः परस्य हलादेः पित ईट् स्यात् । ब्रवीति । ब्रूतः । ब्रुवन्ति ।

---

**लिह् लुङ् आत्मनेपद-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अलीढ/अलिक्षत | अलिक्षाताम् | अलिक्षन्त |
| मध्यमपुरुष | अलीढाः/अलिक्षथाः | अलिक्षाथाम् | अलीढ्वम्/अलिक्षध्वम् |
| उत्तमपुरुष | अलिक्षि | अलिह्वहि/अलिक्षावहि | अलिक्षामहि |

**लृङ्मा-** लृट्मा जस्तै प्रक्रिया हुन्छ । ति, सि, को इकार लोप आदि ङित् लकारमा हुने प्रक्रिया अधिक हुन्छन् ।

**परस्मैपदमा-** 'अलेक्ष्यत्' आदि र आत्मनेपदमा 'अलेक्ष्यत' आदि रूप हुन्छन् ।

**ब्रूञ्** धातु स्पष्ट बोल्नु अर्थमा छ । ञकारको इत्संज्ञा हुन्छ । उभयपदी धातु हो ।(अनिट् सकर्मक)

**ब्रुव इति-** ब्रू धातुदेखि विधान गरिएको लट् लकारसम्वन्धी तिप् आदि पाँचका स्थानमा णल् आदि पाँच आदेश विकल्पले होऊन् र ब्रू धातुका स्थानमा आह् आदेश पनि होस् ।

**आह-** ब्रू लट्, तिप्, शप्, लुक्, 'ब्रू+ति' यहाँ "ब्रुवः पञ्चानाम्०"ले तिका स्थानमा णल् र ब्रूका स्थानमा आह् आदेश भयो, 'आह' सिद्ध भयो । यस्तै प्रकारले आहतुः, आहुः पनि सिद्ध हुन्छन् ।

**आह इति-** आह् धातुका हकारका स्थानमा थकार आदेश होस्, झल् पर भएमा ।

**आत्थ-** ब्रू लट्, सिप् "ब्रुवः पञ्चानाम्०" थलआदेश आह आदेश भएपछि 'आह्+थ' यहाँ "आहस्थः" ले "अलोऽन्त्यस्य" लाएर हकारका स्थानमा थकार भयो, "खरि च"ले चर्त्व भएर थकारका स्थानमा तकार भयो, 'आत्थ' सिद्ध भयो । यो थल् सार्वधातुक हुनाले "आर्धधातुकस्येड् वलादेः"ले इट् पाउने प्रसङ्ग उठ्दैन । यसरी ब्रुधातुको लट्मा "ब्रुव पञ्चानाम्०"ले ब्रुका स्थानमा वैकल्पिक आह् आदेश र तिप् तस् झि सिप् थस्का स्थानमा णल् अतुस्, उस्, थल्, अथुस् आदेश भएको पक्षमा आह, आहतुः आहुः । आत्थ आहथुः, यी पाँच रूपमात्र हुन्छन् । "ब्रुव पञ्चानाम्" नलागेको पक्षमा प्रक्रिया देखाइन्छ ।

**ब्रुव इति-** ब्रू धातुदेखि पर रहेका हल् आदिमा हुने पित् प्रत्ययको ईट् आगम होस् ।

**ब्रवीति-** "ब्रुव पञ्चानाम्" नलागेको पक्षमा 'ब्रू+ति' यहाँ "ब्रुव ईट्"ले तिको दीर्घ ईट् आगम भयो, 'ब्रू+ईति' गुण अव् आदेश भयो, 'ब्रवीति' सिद्ध भयो । **ब्रूतः-** तस्मा 'ब्रु+तस्' यहाँ गुणनिषेध रुत्व, विसर्ग हुन्छ अरू प्रक्रिया छैन । **ब्रुवन्ति-** झिमा 'ब्रू+अन्ति' ङित्वाद् गुण निषेध उवङ् भयो, 'ब्रुवन्ति' सिद्ध भयो । **ब्रवीसि-** सिप्मा 'ब्रू+सि' ईट्, गुण, अव् आदेश, षत्व भयो, 'ब्रवीषि' सिद्ध भयो । **ब्रूथः, ब्रूथ-** थस् थमा 'ब्रु+थस्', 'ब्रु+थ' यहाँ गुणनिषेध हुन्छ ।

**ब्रवीमि-** पित्वाद् ईट् आगम, गुण, अव् आदेश भयो, 'ब्रवीमि' सिद्ध भयो ।

---

ब्रूते । ब्रुवाते । ब्रुवते ।

**५९६. ब्रुवो वचिः २।४।५३॥**

आर्धधातुके । उवाच । ऊचतुः । ऊचुः । उवचिथ, उवक्थ । ऊचे । वक्तासि, वक्तासे । वक्ष्यति, वक्ष्यते ।

---

**ब्रूवः, ब्रूमः-** यहाँ गुणनिषेध र रुत्व, विसर्ग हुन्छ ।

**लट् आत्मनेपदमा-** ङित्वात् सर्व गुणनिषेध हलादि विभक्तिमा अरू केही कार्य छैन । अजादि विभक्तिमा उवङ् हुन्छ ।

| ब्रू.लट् आ.- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | ब्रूते | ब्रुवाते | ब्रुवते |
| | मध्यमपुरुष | ब्रूषे | ब्रुवाथे | ब्रूध्वे |
| | उत्तमपुरुष | ब्रुवे | ब्रूवहे | ब्रूमहे |

**ब्रुवो वचिरिति-** ब्रू धातुका स्थानमा वच् आदेश होस्, आर्धधातुकसंज्ञक प्रत्ययका विषयमा ।

**उवाच-** ब्रू लिट्, पित्, आर्धधातुकसंज्ञा वच् आदेश, णल्, 'वच्+अ', द्वित्व, हलादिशेष, 'ववच्+अ', "लिटचभ्यासस्योभयेषाम्"ले संप्रसारण पूर्वरूप 'उवच्+अ', वृद्धि 'उवाच' सिद्ध भयो ।

**ऊचतुः, ऊचुः-** 'वच्+अतुस्' यहाँ "सम्प्रसारणं तदाश्रयं च कार्यं बलवत्" यो परिभाषा लगाएर "वचिस्वपियजादीना०"ले सम्प्रसारण पूर्वरूप 'उच्+अतुस्' द्वित्व उच् 'उच्+अतुस्' हलादिशेष 'उ+उच्+अतुस्' "अकः सवर्णे दीर्घः"ले दीर्घ 'ऊचतुः' सिद्ध भयो । यसैगरी ऊचुः पनि सिद्ध हुन्छ ।

**उवचिथ/उवक्थ-** 'वच्+थ' यहाँ तासि प्रत्ययमा नित्यानिट् अकारवान् धातु हुनाले थलको वैकल्पिक इट् आगम भयो, 'वच्+इथ' द्वित्व, हलादिशेष, अभ्यासको सम्प्रसारण, पूर्वरूप, 'उवचिथ' सिद्ध भयो । इट् नभएको पक्षमा पनि द्वित्वादि भयो, 'उवच्+थ' "चोःकु"ले कुत्व भयो, 'उवक्थ' सिद्ध भयो ।

**ऊचथुः, ऊच-** अतुस्मा जस्तै प्रक्रिया भयो र रूप सिद्ध भए ।

**उवाच/उवच-** उत्तमपुरुषको णल्मा णित्त्व विकल्प हुनाले वृद्धि भएको पक्षमा 'उवाच' वृद्धि नभएको पक्षमा 'उवच' यी दुई रूप पूर्ववत् सिद्ध हुन्छन् ।

**ऊचिव, ऊचिम-** व, ममा क्रादिनियमले नित्य नै इट् हुन्छ र अतुस् उस्मा जस्तै प्रक्रिया हुन्छ ।

**आत्मनेपदमा-** पनि से, ध्वे, वहे, महे, मा क्रादिनियमले नित्य इट् हुन्छ । सम्प्रसारण र पूर्वरूप भएपछि द्वित्व हुन्छ ।

| ब्रू.लिट् आ.- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | ऊचे | ऊचाते | ऊचिरे |
| | मध्यमपुरुष | ऊचिषे | ऊचाथे | ऊचिध्वे |
| | उत्तमपुरुष | ऊचे | ऊचिवहे | ऊचिमहे |

**लुट्लकारमा-** वक्ता, वक्ता, वक्तारौ, वक्तारः । वक्तासि आदि रूप परस्मैपदमा र वक्ता, वक्तारौ, वक्तारः । वक्तासे आदि रूप आत्मनेपदमा हुन्छन् ।

**लृट्मा-** 'वच्+स्य+ति' यहाँ कुत्व, षत्व, क्षत्व भएर 'वक्ष्यति' आदि रूप परस्मैपदमा र 'वक्ष्यते' आदि रूप आत्मनेपदमा सिद्ध हुन्छन् ।

ब्रवीतु, ब्रूतात् । ब्रूताम् । ब्रुवन्तु । ब्रूहि । ब्रवाणि । ब्रूताम् । ब्रवै । अब्रवीत्, अब्रूत । ब्रूयात, ब्रुवीत ।

---

**लोट् परस्मैपदमा- विधिलोट्मा-** 'ब्रू+तु' यहाँ तु पित् हुनाले ईट्आगम, गुण, अव्आदेश भयो, 'ब्रवीतु' सिद्ध भयो । **आशीर्लोट्**मा तुका स्थानमा पक्षे, तातङ् भयो, तातङ् ङित् हुनाले ईट् भएन, 'ब्रूतात्' सिद्ध भयो । तातङ् नभएको पक्षमा 'ब्रवीतु' सिद्ध भयो ।

हि अपित् हुनाले ईट् पनि हुन्न, गुण पनि हुन्न । उत्तमपुरूषमा पनि आट्मा पित्त्व हुनाले गुण हुन्छ । अरू अजादि विभक्तिमा उवङ् आदेश हुन्छ ।

| | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| ब्रू. लोट् पर.- | प्रथमपुरुष | ब्रवीतु/ब्रूतात् | ब्रूताम् | ब्रुवन्तु |
| | मध्यमपुरुष | ब्रूहि/ब्रूतात् | ब्रूतम् | ब्रूत |
| | उत्तमपुरुष | ब्रवाणि | ब्रवाव | ब्रवाम |
| ब्रू. लोट् आ.- | प्रथमपुरुष | ब्रूताम् | ब्रुवाताम् | ब्रुवताम् |
| | मध्यमपुरुष | ब्रूष्व | ब्रुवाथाम् | ब्रूध्वम् |
| | उत्तमपुरुष | ब्रवै | ब्रवावहै | ब्रवामहै |

**लङ् परस्मैपदमा-** तिप् सिप्मा हलादि पित् हुनाले 'ब्रुव ईट्'ले ईट्आगम हुन्छ । मिप्का स्थानमा अम् भएर हलादि पित् छैन र ईट् भएन । तिप्, सिप्, मिप्मा गुण अरू अजादि विभक्तिमा उवङ् हुन्छ । हलादिमा ब्रू यथावत् रहन्छ ।

| | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| ब्रू. लङ् पर.- | प्रथमपुरुष | अब्रवीत् | अब्रूताम् | अब्रुवन् |
| | मध्यमपुरुष | अब्रवीः | अब्रूतम् | अब्रूत |
| | उत्तमपुरुष | अब्रवम् | अब्रूव | अब्रूम |

**आत्मनेपदमा-** अजादि विभक्तिमा उवङ् हलादिमा ब्रू यथावत् रहन्छ ।

| | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| ब्रू. लङ् आ.- | प्रथमपुरुष | अब्रूत | अब्रुवाताम् | अब्रुवत |
| | मध्यमपुरुष | अब्रूथाः | अब्रुवाथाम | अब्रूध्वम् |
| | उत्तमपुरुष | अब्रुवि | अब्रूवहि | अब्रूमहि |

**विधिलिङ्-** सार्वधातुक हुनाले वच् आदेश हुँदैन-

| | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| ब्रू.वि.लि.पर.- | प्रथमपुरुष | ब्रूयात् | ब्रूयाताम् | ब्रूयुः |
| | मध्यमपुरुष | ब्रूयाः | ब्रूयातम् | ब्रूयात |
| | उत्तमपुरुष | ब्रूयाम् | ब्रूयाव | ब्रूयाम |
| ब्रू.वि.लि.आ.- | प्रथमपुरुष | ब्रुवीत | ब्रुवीयाताम् | ब्रुवीरन् |
| | मध्यमपुरुष | ब्रुवीथाः | ब्रुवीयाथाम् | ब्रुवीध्वम् |
| | उत्तमपुरुष | ब्रुवीय | ब्रुवीवहि | ब्रुवीमहि |

उच्यात्, वक्षीष्ट ॥

**५९७. अस्यतिवक्तिख्यातिभ्योऽङ् ३।१।५२॥**

एभ्यश्च्लेरङ् स्यात् ॥

**५९८. वच उम् ७।४।२०॥**

अङि परे । अवोचत्,अवोचत । अवक्ष्यत्, अवक्ष्यत ।

---

**आशीर्लिङ्-** आर्धधातुक हुनाले वच् आदेश हुन्छ ।

| ब्रू.आ.लि.पर.- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | उच्यात् | उच्यास्तास् | उच्यासुः |
| | मध्यमपुरुष | उच्याः | उच्यास्तम् | उच्यास्त |
| | उत्तमपुरुष | उच्यासम् | उच्यास्व | उच्यास्म |

**वक्षीष्ट-** वच् आशीर्लिङ, आत्मनेपद त, सीयुट् आगम, सुट् आगम, 'वच्+सीय्+स्+त' यकारको लोप चकारको कुत्व, 'वक्सीस्त' दुवै सकारको षत्व, ककार षकार संयोगबाट क्षत्व भयो, 'वक्षीष्ट' सिद्ध भयो ।

| ब्रू.आ.लि.आ.- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | वक्षीष्ट | वक्षीयास्ताम् | वक्षीरन् |
| | मध्यमपुरुष | वक्षीष्ठाः | वक्षीयास्थाम् | वक्षीध्वम् |
| | उत्तमपुरुष | वक्षीय | वक्षीवहि | वक्षीमहि |

**अस्यतीति-** दैवादिक अस् धातु वच् धातु र ख्या धातुदेखि पररहेका च्लिका स्थानमा अङ् आदेश होस् ।

**वच इति-** वच धातुको उम् आगम होस् अङ् पर भएमा ।

**अवोचत्-** ब्रू धातुदेखि लुङ्, लकारका स्थानमा तिप् भयो, 'अब्रू+ति' च्लि प्रत्यय वच् आदेश भयो, 'अवच्+च्लि+ति' भयो, "अस्यतिवक्ति"ले च्लिका स्थानमा अङ् भयो, 'अवच्+अ+ति' भएपछि "वच उम्"ले उम् आगम भयो, म्को इत्संज्ञा लोप भएपछि, "मिदचोऽन्त्यात्परः" लगाएर वका अकारदेखि पर 'उ' भयो, 'अव+उ+च्+अति' भयो, गुण 'अवोच्+अति', तिका इकारको "इतश्च"ले लोप भयो, 'अवोचत्' सिद्ध भयो । यस्तै प्रकारले अवोचताम्, अवोचन् आदि रूप हुन्छन् ।

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| ब्रू.लुङ्.पर.- | प्रथमपुरुष | अवोचत् | अवोचताम् | अवोचन् |
| | मध्यमपुरुष | अवोचः | अवोचतम् | अवोचत |
| | उत्तमपुरुष | अवोचम् | अवोचाव | अवोचाम |
| ब्रू.लुङ् आ.- | प्रथमपुरुष | अवोचत | अवोचेताम् | अवोचन्त |
| | मध्यमपुरुष | अवोचथाः | अवोचेथाम् | अवोचध्वम् |
| | उत्तमपुरुष | अवोचे | अवोचावहि | अवोचामहि |

ब्रू लृङ् लकारमा ब्रूका स्थानमा वच् आदेश हुन्छ । परस्मैपदमा अवक्ष्यत् आदि र आत्मनेपदमा अवक्ष्यत आदि रूप हुन्छन् ।

---

(ग.सू.) चर्करीतं च । चर्करीतमिति यङ्लुगन्तस्य संज्ञा, तददादौ बोध्यम् ॥ ऊर्णुञ् आच्छादने ॥२५॥

**५९९. ऊर्णोतेर्विभाषा ७।३।९०॥**

वा वृद्धिः स्याद्धलादौ पिति सार्वधातुके । ऊर्णौति । ऊर्णोति । ऊर्णुतः । ऊर्णुवन्ति । ऊर्णुते । ऊर्णुवाते । ऊर्णवते । **वा.** (ऊर्णोतेराम्नेति वाच्यम्) ॥

**६००. न न्द्राः संयोगादयः ६।१।३॥**

अचः पराः संयोगादयो नदरा द्विर्न भवन्ति ।

---

(ग.सू.) **चर्करीतमिति**– चर्करीतं यो यङ् लुगन्तको संज्ञा हो । त्यो यङ् लुगन्त अदादिगणभित्र जान्नू । "चर्करीतं च" यो गणसूत्र हो । अदादिगणभित्र यो गणसूत्र राखेकोले यङ्लुक्प्रकरण अदादिभित्र पऱ्यो । अतः "अदिप्रभृतिभ्यः शपः"ले यङ्लुक्प्रकरणमा शप्को लुक् हुन्छ ।

**ऊर्णुञ्** धातु ढाक्नु अर्थमा छ । ञकारको इत्संज्ञा हुन्छ । ञित् धातु हुनाले उभयपदी भयो । दुई अच भएको हुनाले उदात्त (सेट्) हो । (सेट् सकर्मक )

**ऊर्णोतेरिति**– ऊर्णु धातुका स्थानमा विकल्पले वृद्धि होस्, हलादि पित् सार्वधातुकसंज्ञक प्रत्यय परभएमा ।

**ऊर्णौति/ऊर्णोति**– ऊर्णु धातुदेखि लट्, परस्मैपद तिप्, शप्, लुक् भयो, 'ऊर्णु+ति' यहाँ ऊर्णुका उकारका स्थानमा "सार्वधातुकार्धधातुकयोः"ले गुण पायो, त्यसलाई बाधेर "ऊर्णोतेर्विभाषा"ले वैकल्पिक वृद्धि भयो 'ऊर्णौति' सिद्ध भयो । वृद्धि नभएका पक्षमा "सार्वधातुका०"ले गुण भयो, 'ऊर्णोति' सिद्ध भयो । यसरी तिप्मा दुई रूप सिद्ध भए । यसैगरी सिप् र मिप्मा पनि दुई-दुई रूप हुन्छन् ।

**उर्णुतः**- यहाँ ङित् विभक्ति पर हुनाले गुण हुँदैन । अरू विशेष प्रक्रिया छैन् ।

**ऊर्णुवन्ति**– ऊर्णु लट्, झिमा 'ऊर्णु+अन्ति' भएपछि "सार्वधातुकमपित्"ले अन्ति ङित् भएकोले "सार्वधातुकार्धधातुकयोः"ले पाएको गुणनिषेध भयो, "अचिश्नुधातुभ्रुवां०"ले उवङ् भयो, 'ऊर्णुवन्ति' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप सिद्ध गर्नू ।

| ऊर्णु लट् पर.- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | ऊर्णौति/ऊर्णोति | ऊर्णुतः | ऊर्णुवन्ति |
| | मध्यमपुरुष | ऊर्णौषि/ऊर्णोषि | ऊर्णुथः | ऊर्णुथ |
| | उत्तमपुरुष | ऊर्णौमि/ऊर्णोमि | ऊर्णुवः | ऊर्णुमः |

**लट् आत्मनेपद्मा**– पित् प्रत्यय नहुनाले हलादि प्रत्ययमा गुण र वृद्धि हुँदैन । अजादि प्रत्ययमा ङित्वाद् गुणनिषेध हुन्छ र उवङ् हुन्छ ।

| ऊर्णु लट् आ.- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | ऊर्णुते | ऊर्णुवाते | ऊर्णुवते |
| | मध्यमपुरुष | ऊर्णुषे | उर्णुवाथे | ऊर्णुध्वे |
| | उत्तमपुरुष | ऊर्णुवे | ऊर्णुवहे | ऊर्णुमहे |

(**वा.**) **ऊर्णोतराम्नेति**– ऊर्णुञ् धातुदेखि आम् नहोस् भन्नु । "इजादेश्च गुरुमतोऽनृच्छः"ले लिट्मा आम् प्रत्यय पाएकोमा यो वार्तिकले निषेध गर्दछ ।

**नन्द्रा इति**– अच् देखि पर रहेका संयोगको आदिमा रहेका न्, द, र यी वर्णको द्वित्व हुँदैन ।

नुशब्दस्य द्वित्वम् । ऊर्णुनाव । ऊर्णुनुवतुः । ऊर्णुनुवुः ॥

**६०१. विभाषोर्णोः १।२।३॥**

इडादिप्रत्ययो वा ङित्स्यात् । ऊर्णुनुविथ, ऊर्णुनविथ । ऊर्णुविता, ऊर्णविता ।

---

ऊर्णुधातु अजादि छ, अतः "लिटि धातोरनभ्यासस्य"ले द्वित्व गर्दा "अजादेस्तु द्वितीयस्य" अजादिमा हुने धातुको त दोस्रो अच्को द्वित्व होस् भनेकोले दोस्रो अच्-उको द्वित्व हुँदा वृक्षप्रचलन न्यायले 'र्णु' सबैको द्वित्व पाउँछ, त्यसमा रेफको द्वित्व निषेध यो सूत्रले गर्दछ । यदि रेफसहित द्वित्व गर्ने हो भने आदि हल्को शेष भएर 'उरूर्णाव' यस्तो अनिष्ट रूप बन्दछ । सो नहोस् भनेर यो सूत्रको आरम्भ गर्नु पर्‍यो । रेफको द्वित्वनिषेध भएपछि नु शब्दको द्वित्व हुन्छ ।

**ऊर्णुनाव**– ऊर्णु धातुदेखि लिट् लकार भयो, 'ऊर्णु+ल्' भयो, "इजादेश्च"ले आम् पाएकोमा "उर्णोतेराम्नेति०" वार्तिकले निषेध भयो, लकारका स्थानमा परस्मैपद तिप्, णल्, 'ऊर्णु+अ' भयो, "लिटि धातोः०"ले अजादि धातु हुनाले दोस्रो अच्-उको द्वित्व हुँदा वृक्षप्रचलनन्याय लगाएर र्णुको द्वित्व पाएमा "नन्द्राः संयोगादयः"ले रेफको द्वित्व निषेध भयो । यो णुको णकार [८७] "रषाभ्यां नो णः समानपदे"ले गरेको णकार हो । द्वित्वको दृष्टिमा असिद्ध भयो र नु शब्दको द्वित्व भयो । 'उर्+नु+नु+अ' भयो, "अचो ञ्णिति"ले वृद्धि भयो, वर्णमेलन भयो, 'ऊर्नुनाव' णत्व भयो, 'ऊर्णुनाव' सिद्ध भयो ।

**ऊर्णुनुवतुः, ऊर्णुनुवुः**– 'ऊर्णुनु+अतुस्', 'ऊर्णु+नु+उस्' यहाँ अतुस् र उस्को "असंयोगाल्लिट् कित्"ले कित्व भएर गुणनिषेध भयो, उवङ् भयो, 'उर्णुनुवतुः', 'उर्णुनुवुः' सिद्ध भयो ।

**विभाषेति**– ऊर्णुञ् धातुदेखि पर रहेको इट् आदिमा हुने प्रत्यय विकल्पले ङित् होस् ।

**ऊर्णुनुविथ/उर्णुनविथ**– 'ऊर्णु+थ' यहाँ इट् आगम द्वित्व 'उर्णुनु+इथ' भएपछि "विभाषोर्णोः"ले इथलाई विकल्पले ङित् भयो र "सार्वधातुकार्धधातुकयोः"ले पाएको गुण "क्ङिति च"ले निषेध भयो, "अचि श्नुधातुभ्रुवां०"ले उवङ् भयो, 'ऊर्णुनुविथ' सिद्ध भयो । ङित् नभएको पक्षमा गुण भयो 'उर्णुनविथ' भयो । यसरी यी दुई रूप सिद्ध भए । ऊर्णुनुवथुः, ऊर्णुनुव, दुवै ठाउँमा उवङ् हुन्छ ।

**उर्णनाव/उर्णुनव**-उत्तमपुरुष णल्मा वैकल्पिक णित्त्व भएमा वृद्धि, णित्व नभएमा गुण भएर दुई रूप भए ।

**ऊर्णुनुविव/ऊर्णुनविव, ऊर्णुनुविम/ऊर्णुनविम**– व, मको इट् भएपछि "विभाषोर्णोः"ले ङित्त्व भएको पक्षमा गुणनिषेध उवङ् आदेश र ङित्त्व नभएको पक्षमा गुण भएर दुई दुई रूप सिद्ध भए ।

ऊर्णुञ् धातु अनेकाच् हुनाले सेट् छ वलादि आर्धधातुक प्रत्ययको सर्वत्र इट् हुन्छ । अनि इडादि प्रत्ययको सर्वत्र "विभाषोर्णो"ले वैकल्पिक ङिद्वद्भाव गर्छ र ङित्त्व भएको पक्षमा गुणनिषेध भएर उवङ् ङित्त्व नभएको पक्षमा गुण हुन्छ । यसरी इट्आगम हुने स्थलमा परस्मैपद आत्मनेपद दुवै पदमा दुई दुई थरी रूप बन्दछन् ।

**ऊर्णु लुट् परस्मैपद (तासि प्रत्ययको ङित्व पक्षमा उवङ् भएका रूप)**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | ऊर्णुविता | ऊर्णुवितारौ | ऊर्णुवितारः |
| मध्यमपुरुष | ऊर्णुवितासि | ऊर्णुवितास्थः | ऊर्णुवितास्थ |
| उत्तमपुरुष | ऊर्णुवितास्मि | ऊर्णुवितास्वः | ऊर्णुवितास्मः । |

**ऊर्णु लुट् परस्मैपद (तासि प्रत्ययको ङित्व नभएको पक्षमा गुण भएका रूप)**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | ऊर्णविता | ऊर्णवितारौ | ऊर्णवितारः |
| मध्यमपुरुष | ऊर्णवितासि | ऊर्णवितास्थः | उर्णवितास्थ |
| उत्तमपुरुष | ऊर्णवितास्मि | ऊर्णवितास्वः | ऊर्णवितास्मः |

---

८७ 'नकारजावनुस्वार' यो कारिका अनुसार, ऊर्णुञ्धातुको णकार नकार नै ठहर्छ ।

ऊर्णुविष्यति, ऊर्णविष्यति । ऊर्णौतु, ऊर्णोतु । ऊर्णुवानि । ऊर्णवै ॥

**६०२. गुणोऽपृक्ते ७।३।९१॥**

ऊर्णोतेर्गुणोऽपृक्ते हलादौ पिति सार्वधातुके । वृद्धचपवादः । और्णोत् । और्णोः ।

---

**ऊर्णु लोट्** आत्मनेपदमा तासि प्रत्ययको ङित्त्व पक्षमा– ऊर्णुवि ऊर्णुवितारौ, ऊर्णुवितारः । उर्णुवितासे आदि र ङित्त्व नभएको पक्षमा ऊर्णविता, ऊर्णवितारौ/ऊर्णवितारः । ऊर्णवितासे आदि रूप हुन्छन् ।

**ऊर्णु लृट्** परस्मैपदमा स्य प्रत्ययको ङित्व भएको पक्षमा ऊर्णुविष्यति, ऊर्णुविष्यतः, उर्णुविष्यन्ति आदि रूप र ङित्व नभएको पक्षमा उर्णविष्यति, ऊर्णविष्यतः ऊर्णविष्यन्ति आदि रूप हुन्छन् ।

**ऊर्णु लृट्** आत्मनेपदमा पनि स्य प्रत्ययको ङित्व पक्षमा ऊर्णुविष्यते आदि र ङित्व नभएको पक्षमा ऊर्णविष्यते आदि रूप हुन्छन् ।

**ऊर्णु लोट्** परस्मैपदमा तुका स्थानमा तातङ् भएको पक्षमा ङित्वाद् वृद्धि, गुण हुँदैन । तातङ् नभएको पक्षमा वैकल्पिक वृद्धि र गुण हुन्छ । सिप्का स्थानमा हि अपित् हुनाले वृद्धि, गुण हुदैन । मिप्मा आट् आगम भएकोले हलादि पित् हुँदैन र वृद्धि हुन्न, गुणमात्र हुन्छ । अरू अजादि विभक्तिमा उवङ् हुन्छ ।

| ऊर्णु लोट् प.– **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | ऊर्णौतु/ऊर्णोतु/ऊर्णुतात् | ऊर्णुताम् | ऊर्णुवन्तु |
| मध्यमपुरुष | ऊर्णुहि/ऊर्णुतात् | ऊर्णुतम् | ऊर्णुत |
| उत्तमपुरुष | ऊर्णवानि | ऊर्णवाव | ऊर्णवाम |

**आत्मनेपदमा**– हलादि विभक्तिमा गुणनिषेध अजादि विभक्तिमध्ये उत्तमपुरुषमा आट्मा पित्त्व हुनाले गुण, अव् आदेश र अरू अजादि विभक्तिमा गुणनिषेध उवङ् हुन्छ । उत्तमपुरुष बाहेक सबै विभक्ति "सार्वधातुकमपित्"ले ङित् हुन्छन् । उत्तमपुरुषमा विभक्त्यन्त एकारको "एत ऐ"ले ऐकार पनि हुन्छ ।

| ऊर्णु लोट् आ.– **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | ऊर्णुताम् | ऊर्णुवाताम् | ऊर्णुवताम् |
| मध्यमपुरुष | ऊर्णुष्व | ऊर्णुवाथाम् | ऊर्णुध्वम् |
| उत्तमपुरुष | ऊर्णवै | ऊर्णवावहै | ऊर्णवामहै |

**गुण इति**– ऊर्णु धातुका स्थानमा गुण होस्, अपृक्त, हलादि, पित्, सार्वधातुकसंज्ञक प्रत्यय पर भएमा ।

**वृद्ध्यपवाद इति**– "उर्णोतेर्विभाषा"यो सूत्रको अपवाद हो ।

**और्णोत्**– ऊर्णु लङ्, आट्, वृद्धि, तिप्, शप्, लुक्, 'और्णु+ति' यहाँ "इतश्च"ले इकारको लोप भयो, 'और्णु+त्' भयो, यहाँ "सार्वधातुकार्धधातुकयोः"लाई बाधेर "उतो वृद्धिर्लुकि हलि"ले नित्य वृद्धि पाएमा त्यसलाई बाधेर "ऊर्णोतेर्विभाषा"ले वैकल्पिक वृद्धि पायो । त्यसलाई पनि बाधेर "गुणोऽपृक्ते"ले "अलोऽन्त्यस्य" लाएर ऊकारका स्थानमा गुण ओकार भयो, 'और्णोत्' सिद्ध भयो ।

**और्णोः**– लङ् लकारको सिप्मा पनि 'और्णु+स्' भएपछि तिप्मा जस्तै बाध्यबाधकभावानन्तर "गुणोऽपृक्ते"ले गुण रुत्व, विसर्ग भयो, 'और्णोः' सिद्ध भयो । अन्य विभक्तिमा विशेष प्रक्रिया छैन ।

---

ऊर्णुयात् । ऊर्णुयाः । ऊर्णुवीत । ऊर्णूयात् । ऊर्णुविषीष्ट, ऊर्णविषीष्ट ॥

| ऊर्णु लङ् प.- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | और्णोत् | और्णुताम् | और्णुवन् |
| | मध्यमपुरुष | और्णोः | और्णुतम् | और्णुत |
| | उत्तमपुरुष | और्णवम् | और्णुव | और्णुम |

**आत्मनेपदमा-** लङ् लकारको सर्वत्र और्णुका उकारको स्थानमा सबै विभक्ति ङित् हुनाले गुण निषेध हुन्छ अरू विशेष प्रक्रिया छैन अजादि विभक्तिमा उवङ् हुन्छ ।

| ऊर्णु लङ् आ.- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | और्णुत | और्णुवाताम् | और्णुवत |
| | मध्यमपुरुष | और्णुथाः | औणुवाथाम् | और्णुध्वम् |
| | उत्तमपुरुष | और्णुवि | और्णुवहि | और्णुमहि |
| ऊर्णु वि.लि.पर.- | प्रथमपुरुष | ऊर्णुयात् | ऊर्णुयाताम् | ऊर्णुयुः |
| | मध्यमपुरुष | ऊर्णुयाः | ऊर्णुयातम् | ऊर्णुयात |
| | उत्तमपुरुष | ऊर्णुयाम् | ऊर्णुयाव | ऊर्णुयाम |
| ऊर्णु वि.लि.आ.- | प्रथमपुरुष | ऊर्णुवीत | ऊर्णुवीयाताम् | ऊर्णुवीरन् |
| | मध्यमपुरुष | ऊर्णुवीथाः | ऊर्णुवीयाथाम् | ऊर्णुवीध्वम् |
| | उत्तमपुरुष | ऊर्णुवीय | ऊर्णुवीवहि | ऊर्णुवीमहि |

आशीर्लिङ् परस्मैपदमा णुका उकारको "अकृत्सार्वधातुकयोः"ले दीर्घ हुन्छ ।

| ऊर्णु आ.लि.पर.- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | ऊर्णूयात् | ऊर्णूयास्ताम् | ऊर्णूयासुः |
| | मध्यमपुरुष | ऊर्णूयाः | ऊर्णूयास्त | ऊर्णूयास्त |
| | उत्तमपुरुष | ऊर्णूयासम् | ऊर्णूयास्व | ऊर्णुयास्म |

आशीर्लिङ् आत्मनेपदमा ऊर्णु धातु सेट् हुनाले सीयुट्को इट् आगम भएपछि "विभाषोर्णोः"ले ङित्वद् भाव भएको पक्षमा उवङ् हुन्छ । ङित्वद्भाव नभएको पक्षमा गुण अव् आदेश हुन्छ । अतः दुई थरी रूप हुन्छन् -

**ऊर्णु आशीर्लिङ् आत्मनेपद (उवङ् भएको पक्षमा )-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | ऊर्णुविषीष्ट | ऊर्णुविषीयास्ताम् | ऊर्णुविषीरन् । |
| मध्यमपुरुष | ऊर्णुविषीष्ठाः | ऊर्णुविषीयास्थाम् | ऊर्णुविषीढ्वम्/ऊर्णुविषीध्वम् । |
| उत्तमपुरुष | ऊर्णुविषीय | ऊर्णुविषीवहि | ऊर्णुविषीमहि । |

**ऊर्णु आशीर्लिङ् आत्मनेपद (गुण भएको पक्षमा )-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | ऊर्णविषीष्ट | ऊर्णविषीयास्ताम् | ऊर्णविषीरन् |
| मध्यमपुरुष | ऊर्णविषीष्ठाः | ऊर्णवविषीयास्थाम् | ऊर्णविषीढ्वम / ऊर्णविषीध्वम |
| उत्तमपुरुष | ऊर्णविषीय | ऊर्णविषीवहि | ऊर्णविषीमहि । |

**६०३. ऊर्णोतेर्विभाषा ७।२।६॥**

इडादौ सिचि वा वृद्धिः परस्मैपदे परे। पक्षे गुणः। और्णावीत्, और्णुवीत्, और्णवीत्। और्णाविष्टाम्, और्णुविष्टाम्, और्णविष्टाम्। और्णुविष्ट,

---

**ऊर्णोतेरिति**– ऊर्णुञ् धातुका स्थानमा इट् आदिमा हुने परस्मैपद परभएको सिच् पर भएमा विकल्पले वृद्धि होस्। "ऊर्णोतेर्विभाषा" हलादि पित्लाई सार्वधातुक परभएमा वृद्धि गर्ने सूत्र अर्कै हो, यो अर्कै हो।

**और्णुवीत्/और्णावीत्/और्णवीत्**– लुङमा 'और्णु+इस्+इत्' यस्तो स्थितिमा 'और्णु+इस्' यहाँ "इको यणचि"लाई बाधेर उवङ्, उवङ्लाई बाधेर "सार्वधातुकार्ध०"ले गुण, त्यसलाई बाधेर "सिचि वृद्धिः"ले नित्यवृद्धि त्यसलाई बाधेर "ऊर्णोतेर्विभाषाले वैकल्पिक वृद्धि पाएमा इडादि सिच्लाई "विभाषोर्णोः"ले पाक्षिक ङित् भएको हुँदा "क्ङिति च"ले गुण वृद्धि, निषेध भएपछि उवङ् भयो, 'और्णुविस्+ईत्' सिच्को लोप दीर्घ भयो, 'और्णुवीत्' सिद्ध भयो। ङित् नभएको पक्षमा "उर्णोतेर्विभाषा"ले वैकल्पिक वृद्धि भयो, आव् आदेश भयो, 'और्णाविस्+ईत्' यहाँ सकारको लोप, दीर्घ भयो, 'और्णावीत्' सिद्ध भयो। वैकल्पिक वृद्धि नभएको पक्षमा "सार्वधातुकार्ध"ले गुण भयो, अव् आदेश भयो, 'और्णविस्+ईत्' यहाँ सकारको लोप दीर्घ भयो, 'और्णवीत्' सिद्ध भयो।

वैकल्पिक वृद्धि नभएको पक्षमा "सिचि वृद्धिः"ले नित्य वृद्धि किन भएन भन्ने शङ्का छैन। वैकल्पिक वृद्धि व्यर्थ हुन्छ। अत एव वृद्धि नभएको पक्षमा "सार्वधातुकार्धधातुकयोः"ले गुण हुन्छ। यसरी ऊर्णु धातुको लुङ् लकारको परस्मैपदमा सिच्को ङित्त्व भएको पक्षमा उवङ् भएका पक्षमा वैकल्पीक वृद्धि भएको पक्षमा अर्को थरी रूप, वृद्धि नभएको पक्षमा गुण भएका अर्को थरी रूप गरी तीन थरी रूप हुन्छन्। ती तीन थरी रूपहरू क्रमशः तल दिइन्छ -

**ऊर्णु लुङ् परस्मैपद (उवङ् भएका पक्षका रूप)**–

| | | | |
|---|---|---|---|
| प्रथमपुरुष | और्णुवीत् | और्णुविष्टाम् | और्णुविषुः |
| मध्यमपुरुष | और्णुवीः | ओर्णुविष्टम् | और्णुविष्ट |
| उत्तमपुरुष | और्णुविषम् | और्णुविष्व | और्णुविष्म |

**ऊर्णु लुङ् परस्मैपद (वृद्धि भएको पक्षका रूप)**–

| | | | |
|---|---|---|---|
| प्रथमपुरुष | और्णावीत् | और्णाविष्टाम् | और्णाविषुः |
| मध्यमपुरुष | और्णावीः | और्णाविष्टम् | और्णाविष्ट |
| उत्तमपुरुष | और्णाविषम् | और्णाविष्व | और्णाविष्म |

**ऊर्णु लुङ् परस्मैपद (गुण भएको पक्षका रूप)**–

| | | | |
|---|---|---|---|
| प्रथमपुरुष | और्णवीत् | और्णविष्टाम् | और्णविषुः |
| मध्यमपुरुष | और्णवीः | और्णविष्टम् | और्णविष्ट |
| उत्तमपुरुष | और्णविषम् | और्णविष्व | और्णविष्म |

**लुङ् आत्मनेपदमा**– ङित्व पक्षमा गुणनिषेध भएकोले उवङ् र ङित्वाभावपक्षमा गुण हुन्छ

**ऊर्णु लुङ् आत्मनेपद (उवङ् भएको पक्षका रूप)**–

| | | | |
|---|---|---|---|
| प्रथमपुरुष | और्णुविष्ट | और्णुविषाताम् | और्णुविषत |
| मध्यमपुरुष | और्णुविष्ठाः | और्णुविषाथाम् | और्णुविढ्वम्/और्णुविध्वम् |
| उत्तमपुरुष | और्णुविषि | और्णुविष्वहि | और्णुविष्महि |

और्णविष्ट । और्णुविष्यत्, और्णविष्यत् । और्णुविष्यत, और्णविष्यत ॥

इत्यदादयः ॥२॥

## अथ जुहोत्यादयः

हु दानादनयोः ॥१॥

**६०४. जुहोत्यादिभ्यः श्लुः २।४।७५॥**

शपः श्लुः स्यात् ॥

**६०५. श्लौ ६।१।१०॥**

धातोर्द्वे स्तः । जुहोति । जुहुतः ॥

**६०६. अदभ्यस्तात् ७।१।४॥**

झस्यात्स्यात् । हुश्नुवोरिति यण् ।

---

**गुणपक्षे**– और्णविष्ट, और्णविषाताम्, और्णविषत.... आदि रूप हुन्छन् ।

**लृङ् परस्मैपदमा**– स्य प्रत्ययको ङित्व भएको पक्षमा उवङ् भएका र ङित्व नभएको पक्षमा गुण भएका और्णुविष्यत्, और्णविष्यत्, आदि दुई थरी रूप हुन्छन् र आत्मनेपदमा और्णुविष्यत, और्णविष्यत आदि दुई थरी रूप हुन्छन् भन्ने कुरा सुवोध्य नै छ ।

**अदादिगण समाप्त भयो ।**

---------------

**अब जुहोत्यादिगण शुरु हुन्छ ।**

हु धातु दिनु र खानु अर्थमा छ । परस्मैपदी हो । (अनिट् सकर्मक)

**जुहोत्यादिति**– जुहोत्यादि गणपठित धातुदेखि विधान गरिएका शप्को श्लु होस् ।

**श्लाविति**– श्लुको विषयमा धातुको द्वित्व होस् ।

**जुहोति**– हु धातुदेखि लट् लकार परस्मैपद, तिप्, 'हु+ति', शप् भयो, 'हु+अ+ति' भयो, "जुहोत्यादिभ्यः श्लुः"ले शप्को श्लु भयो, श्लु भनेको "प्रत्ययस्य लुक्श्लुलुपः" यस सूत्रले प्रत्ययको अदर्शन हो भनेकोले शप्को लोप भयो, 'हु+ति' भयो, अब "श्लौ" यो सूत्रले धातु हुको द्वित्व भयो, 'हहु+ति' हलादिशेष, "कुहोश्चुः"ले चुत्व, 'झु+हु+ति' "अभ्यासे चर्च"ले जश्त्व, 'जुहु+ति', "सार्वधातुकार्ध"ले गुण भयो, 'जुहोति' सिद्ध भयो ।

**जुहुतः**– हु लट्, तस्, शप्, श्लु, "श्लौ"ले धातुको द्वित्व, अभ्यासकार्य, 'जुहु+तस्' तस्मा ङित्व हुनाले गुणनिषेध, रुत्व, विसर्ग, 'जुहुतः' सिद्ध भयो ।

**अदिति**– अभ्यस्तसंज्ञक धातुदेखि पर रहेको प्रत्ययको अवयव झकारका स्थानमा अत् आदेश होस् ।

**हुश्नुवोरिति**– "हुश्नुवोः सार्वधातुके" ले यण् हुन्छ ।

जुह्वति ॥

**६०७. भीह्रीभृहुवां श्लुवच्च ३।१।३९॥**

एभ्यो लिटि आम् वा स्यादामि श्लाविव कार्यं च । जुहवाञ्चकार, जुहाव । होता । होष्यति ।

---

**जुह्वति**– हु लट्, झि, शप्, श्लु, द्वित्व, अभ्यासकार्य, 'जुहु+झि' जुहु यसको "उभे अभ्यस्तम्"ले अभ्यस्तसंज्ञा "झोऽन्तः"लाई बाधेर "अदभ्यस्तात्"ले झिका झकारका स्थानमा अत् आदेश 'जुहु+अति', ङित्वाद् गुणनिषेध, उवङ्लाई बाधेर "हुश्नुवोः सार्वधातुके"ले यण् भयो, 'जुह्वति' सिद्ध भयो । अरू रूप- जुहोषि, जुहुथः, जुहुथ । जुहोमि, जुहुवः, जुहुमः ।

**भीह्रीति**– भी धातु, ह्री धातु, भी धातु, हु धातुदेखि लिट् लकार परभएमा विकल्पले आम् प्रत्यय होस्, आम् पर भएमा श्लुमा जस्तै कार्य पनि होस् ।

**जुहवाञ्चकार**– हु धातुदेखि लिट् लकार भयो, 'हु+ल्' भयो, "भीह्रीभृहुवां०"ले विकल्पले आम् र आम् प्रत्यय पर भएमा श्लुमा जस्तै कार्य होस् भनेकोले हुधातुदेखि आम्प्रत्यय भयो, धातुको द्वित्व अभ्यासकार्य भयो, 'जुहु+आम्+ल्', गुण, अव् आदेश 'जुहवाम्+ल्' भयो, "आमः"ले लिट्को लुक् भयो, "कृञ्चानुप्रयुज्यते०"ले लिट्लकार पर हुने कृधातुको अनुप्रयोग भयो, "आम्प्रत्ययवत्कृञोऽनुप्रयोगस्य"ले परस्मैपद प्रथमपुरुष एकवचन तिप्, तिपका स्थानमा णल् भयो, 'जुहवाम्+कृ+अ' भयो, द्वित्वादि पूर्ववत् भयो, 'जुहवाञ्चकार' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि पूर्ववत् जान्नू ।

आम् प्रत्यय भएको कृ धातुको अनुप्रयोग भएको पक्षका रूप-

| **हु लिट्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | जुहवाञ्चकार | जुहवाञ्चक्रतुः | जुहवाञ्चक्रुः |
| | मध्यमपुरुष | जुहवाञ्चकर्थ | जुहवाञ्चक्रथुः | जुहवाञ्चक्र |
| | उत्तमपुरुष | जुहवाञ्चकार/कर | जुहवाञ्चकृव | जुहवाञ्चकृम |

भू र अस्को अनुप्रयोगमा जुहवाम्बभूव, जुहवामास आदि रूप पूर्ववत् हुन्छन् ।

**आम् प्रत्यय नभएको पक्षमा–**

**जुहाव**– हु ल्, यहाँ तिप्, णल्, 'हु+अ' द्वित्व, अभ्यासकार्य 'जुहु+अ' वृद्धि आव्आदेश 'जुहाव' सिद्ध भयो ।

**जुहुवतुः/जुहुवुः**– द्वित्वादि पछि उवङ् आदेश हुन्छ । लिट् आर्धधातुक हुनाले "हुश्नुवोः सार्वधातुके" लाग्दैन ।

**जुहविथ/जुहोथ**– थलमा वैकल्पिक इट् आगम हुन्छ ।

**जुहुवथुः/जुहुव**– अथुस्, अमा पनि द्वित्वादि भएपछि उवङ् हुन्छ ।

**जुहाव/जुहव**- उत्तमपुरुष णल्मा णित्त्व पक्षमा वृद्धि णित्त्व नभएको पक्षमा गुण हुन्छ ।

**जुहुविव, जुहुविम**– व ममा क्रादिनियमले नित्य इट् हुन्छ ।

**लुट्मा**– होता, होतारौ, होतारः । होतासि आदि रूप हुन्छन् ।

**लृटमा**– होष्यति, होष्यतः, होष्यन्ति । आदि रूप हुन्छन् ।

**लोट्मा**– तिप्मा तातङ् भएको पक्षमा गुण हुँदैन, सिप्मा हि भएको पक्षमा र तातङ् भएको पक्षमा पनि गुण हुँदैन । तातङ् नभएको पक्षमा "हुझल्भ्यो हेर्धिः"ले हिका स्थानमा धि हुन्छ । मिप्,

जुहोतु, जुहुतात् । जुहुताम् । जुह्वतु । जुहुधि । जुहवानि । अजुहोत् । अजुहुताम् ॥

६०८. **जुसि च ७।३।८३॥**

इगन्ताङ्गस्य गुणोऽजादौ जुसि ।

अजुहवुः । जुहुयात् । हूयात् । अहौषीत् । अहोष्यत् ॥ **ञिभी** भये ॥२॥ विभेति ॥

---

वस्, मस्मा आट्मा पित्त्व हुनाले गुण हुन्छ । अरू अजादि विभक्तिमा र तिप् (तु) मा गुण हुन्छ । सबै रूप तल दिइन्छ-

| **हु. लोट्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | जुहोतु/तात् | जुहुताम् | जुह्वतु |
| | मध्यमपुरुष | जुहुधि/तात् | जुहुतम् | जुहुत |
| | उत्तमपुरुष | जुहवानि | जुहवाव | जुहवाम |

**अजुहोत्–** हु, लङ्, तिप्, शप्, श्लु, द्वित्वादि, गुण, 'अजुहोति', तिका इकारको "इतश्च"ले लोप भयो, 'अजुहोत्' सिद्ध भयो ।

**अजुहुताम्-** हु, लङ्, पूर्ववत् 'अजुहु+तस्', तस्का स्थानमा ताम् भयो, 'अजुहुताम्' सिद्ध भयो ।

**जुसीति–** इक् अन्तमा हुने अङ्गका स्थानमा गुण होस्, अच् आदिमा हुने जुस् पर भएमा । लिङ्मा यासुट्ले छेक्छ, लुङ्मा सिच्ले छेक्छ र अजादि जुस् हुँदैन ।

**अजुहवुः–** पूर्ववत् 'अजुहु+झि' भएपछि, "अदभ्यस्तात्"लाई बाधेर "सिजभ्यस्त"ले जुस् भयो, 'अजुहु+उस्' भयो, 'अजुहु+उस्' यहाँ "इकोयणचि"लाई बाधेर सवर्णदीर्घ पायो, त्यसलाई बाधेर उवङ् पायो, त्यसलाई बाधेर "सर्वधातुकार्ध०"ले गुण पायो, त्यसको "क्ङिति च"ले निषेध भयो, पुन उवङ् पायो, त्यसलाई बाधेर "हुश्नुवोः०"ले यण् पायो, त्यसलाई बाधेर "जुसि च"ले हुका उकारका स्थानमा गुण भयो, 'अजुहो+उस्', अव्आदेश भयो, 'अजुहवुः' सिद्ध भयो ।

**बाँकी रूप–** अजुहोः, अजुहुतम्, अजुहुत । अजुहवम् अजुहुव अजुहुम ।

| **विधिलिङ्–** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | जुहुयात् | जुहुयाताम् | जुहुयुः |
| | मध्यमपुरुष | जुहुयाः | जुहुयातम् | जुहुयात |
| | उत्तमपुरुष | जुहुयाम् | जुहुयाव | जुहुयाम |

आशीर्लिङ्मा "अकृत्सार्वधातुकयोः०"ले दीर्घ हुन्छ । हूयात्, हूयास्ताम्, हूयासुः । हूयाः आदि रूप हुन्छन् ।

**लुङ्मा–** "सिचि वृद्धिः परस्मैपदेषु"ले वृद्धि हुन्छ । यहाँ श्रुधातुमा 'अश्रौषीत्' आदि रूप भए झैं 'अहौषीत्' अहौष्टाम्, अहौषुः । अहौषीः । आदि रूप ऊह गर्नू ।

**लृङ्मा-** स्यको इट् आगम हुँदैन, हु धातु अनिट् हो, अहोष्यत्, अहोष्यताम्, अहोष्यन् आदि रूप हुन्छन् ।

**ञिभी–** धातु डराउनु अर्थमा छ । ञिको "आदिर्ञिटुडवः"ले इत्संज्ञा र लोप हुन्छ । यसलाई ञकारको इत्संज्ञा हुने धातु नसम्झनु । यो ञिको इत्संज्ञा हुने धातु हो र "स्वरितञितः" यो सूत्र लाग्दैन । "शेषात्कर्तरि परस्मैपदम्"ले परस्मैपद हुन्छ । "ऊदृदन्तैः०" यो कारिकाभित्र नपर्ने एकाच् अजन्त धातु हुनाले अनुदात्त हो । (अनिट् अकर्मक)

**विभेति–** भी धातुदेखि लट्, तिप्, शप् भयो, शप्को श्लु भएर लोप भयो, द्वित्व, अभ्यासकार्य

**६०९. भियोऽन्यतरस्याम् ६।४।११५॥**

इकारो वा स्याद्धलादौ क्ङिति सार्वधातुके। बिभितः, बिभीतः। बिभ्यति। बिभयाञ्चकार, बिभाय। भेता। भेष्यति।

---

(हलादिशेष, जश्त्व, अच्को ह्रस्व) भयो, 'बिभी+ति' भयो, बिभीका ईकारका स्थानमा "सार्वधातुकार्ध०"ले गुण एकार भयो, 'बिभेति' सिद्ध भयो।

**भिय इति–** भी धातुका दीर्घ ईकारका स्थानमा ह्रस्व इकार विकल्पले होस्, हल् आदिमा हुने कित्, ङित् सार्वधातुकप्रत्यय पर भएमा।

**बिभितः/बिभीतः–** भी लट्, तिप्, श्लु, द्वित्व, अभ्यासकार्य, 'बिभी+तस्' यहाँ "भियोऽन्यतरस्याम्"ले भीका ईकारका स्थानमा वैकल्पिक ह्रस्व इकार भयो, 'बिभितः' ह्रस्व नभएका पक्षमा 'बिभीतः' यसरी दुई रूप सिद्ध भए।

**बिभ्यति–** पूर्ववत् 'बिभी+झि' भएपछि, "अदभ्यस्तात्"ले झिका झकारका स्थानमा अत् भयो, 'बिभी+अति' भयो, यहाँ "इको यणचि"ले पाएको यण्लाई बाधेर इयङ्, इयङ्लाई बाधेर "एरनेकाचो"ले यण् पायो, त्यसलाई बाधेर "सार्वधातुकार्ध०"ले गुण पायो, अतिमा ङित्व हुनाले गुणको निषेध भयो, "बाधकाभावे लाएर "एरनेकाचो"ले यण् भयो, 'बिभ्यति' सिद्ध भयो।

**बाँकीरूप–** बिभेषि, बिभिथः/बिभीथः, बिभिथ/बिभीथ। बिभेमि, बिभिवः/बिभीवः, बिभिमः/बिभीमः।

**लिट्मा–** "भीह्रीभृहुवां०"ले आम् प्रत्यय हुन्छ।

**बिभयाञ्चकार–** भी लिट्, 'भी+ल्', "भीह्रीभृहुवां श्लुवच्च"ले आम् श्लुवद्भाव, द्वित्वादि 'बिभी+आम्+ल्', लिट्को लुक्, कृधातुको अनुप्रयोग, 'बिभयाम्+कृ+ल्', 'बिभयाम्+कृ+अ', 'बिभयाम्+कर्+कृ+अ', 'बिभयाम्+चकृ+अ', 'बिभयाम्+चकर्+अ', 'बिभयाम्+चकार', 'बिभयाञ्चकार' सिद्ध भयो। भूधातुको अनुप्रयोगमा 'बिभयाम्बभूव' आदि रूप र अस् धातुको अनुप्रयोगमा 'बिभयामास' आदि रूप हुन्छन्।

**बिभाय–** 'भी+अ', 'बिभी+अ' वृद्धि आय आदेश 'बिभाय' सिद्ध भयो।

**बिभ्यतुः–** भी अतुस्, 'बिभी+अतुस्' "एरनेकाचो."ले यण् भयो, 'बिभ्यतुः' सिद्ध भयो।

**बिभ्युः–**। यस्तै प्रकारले 'बिभ्युः' सिद्ध हुन्छ।

**बिभयिथ/बिभेथः–** 'भी+थ' भी धातु अजन्त, तासि प्रत्ययमा नित्यानिट् धातु हुनाले भारद्वाजका मतमा, इट्, द्वित्वादि, गुण, अय्आदेश, 'बिभयिथ' सिद्ध भयो। इट् नभएका पक्षमा द्वित्वादि, गुण भयो, 'बिभेथ' सिद्ध भयो। बिभ्यथुः, बिभ्य, पूर्ववत् जान्नू।

**बिभाय/बिभय–** लिट् उत्तमपुरुष णल्मा णिद्वद् भावपक्षे वृद्धि आय् आदेश भयो, 'बिभाय' सिद्ध भयो। नभएको पक्षमा गुण अय् आदेश 'बिभय' यसरी यी दुई रूप सिद्ध भए।

**बिभ्यिव, बिभ्यिम–** व, ममा क्रादिनियमले नित्य इट्, यण् हुन्छ।

**लुट्मा– भेता–** भी धातुदेखि लुट्, तिप्, तासि प्रत्यय 'भी+तास्+ति', यहाँ "एकाच्०"ले अनिट् धातु इट् आगमको निषेध, तिका स्थानमा डा आदेश, टिलोप आदि पूर्ववत् भयो, 'भेता' सिद्ध भयो। यस्तै प्रकारले भेतारौ, भेतारः आदि रूप सिद्ध हुन्छन्।

**लृट्मा– भेष्यति–** भी लृट्, तिप् स्यप्रत्यय 'भी+स्य+ति', गुण, 'भे+स्यति', षत्व, 'भेष्यति' सिद्ध भयो। यस्तै भेष्यतः, भेष्यन्ति आदि रूप पनि सिद्ध हुन्छन्।

---

बिभेतु, बिभितात्, बिभीतात् । अबिभेत् । बिभीयात् । भीयात् ।

**लोट्मा-** हलादि विभक्ति पर भएमा ह्रस्व विकल्पले हुन्छ । उत्तमपुरूषमा आट्मा पित्व हुनाले ईकारका स्थानमा गुण, अय् आदेश हुन्छ । झिमा अत् आदेश भएपछि "एरनेकाच०"ले यण् हुन्छ ।

**भी लोट्-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | बिभेतु/बिभितात्/ बिभीतात् | बिभिताम्/बिभीताम् | बिभ्यतु |
| मध्यमपुरुष | बिभिहि/बिभीहि/ बिभितात्/बिभीतात् | बिभितम्/बिभीतम् | बिभित/बिभीत |
| उत्तमपुरुष | बिभयानि | बिभयाव | बिभयाव । |

**भी लङ्-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अबिभेत् | अबिभिताम्/अबिभीताम् | अबिभयुः |
| मध्यमपुरुष | अबिभेः | अबिभितम्/अबिभीतम् | अबिभित/अबिभीत |
| उत्तमपुरुष | अबिभयम् | अबिभिव/अबिभीव | अबिभिम/अबिभीम |

**विधिलिङ्मा-** यासुट् हलादि ङित् हुनाले सर्वत्र बिभीका ईकारका स्थानमा वैकल्पिक ह्रस्वइकार हुन्छ । पक्षे दीर्घ नै रहन्छ, उभयत्र सकारको लोप हुन्छ, दुईथरी रूप हुन्छन्

**भी विधिलिङ् (ह्रस्वपक्षमा)-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | बिभियात् | बिभियाताम् | बिभियुः |
| मध्यमपुरुष | बिभियाः | बिभियातम् | बिभियात् |
| उत्तमपुरुष | बिभियाम् | बिभियाव | बिभियाम |

**भी विधिलिङ् (ह्रस्व नभएको पक्षमा)-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | बिभीयात् | बिभीयाताम् | बिभीयुः |
| मध्यमपुरुष | बिभीयाः | बिभीयातम् | बिभीयात |
| उत्तमपुरुष | बिभीयाम् | बिभीयाव | बिभीयाम |

**आशीर्लिङ्मा** "लिङाशिषि" ले तिङ्को आर्धधातुक संज्ञा हुने हुनाले "भियोऽन्यतरस्याम्" लाग्दैन । सकारको लोप पनि हुँदैन ।

**भी आ.लि.-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | भीयात् | भीयास्ताम् | भीयासुः |
| मध्यमपुरुष | भीयाः | भीयास्तम् | भीयास्त |
| उत्तमपुरुष | भीयासम् | भीयास्व | भीयास्म |

**लुङ्मा-** "सिचि वृद्धि परस्मैपदेषु"ले वृद्धिहुन्छ र भीका ईकारका स्थानमा ऐकार हुन्छ ।

अभैषीत् । अभेष्यत् ॥ **ह्री** लज्जायाम् ॥३॥ जिह्रेति । जिह्रीतः । जिह्रियति । जिह्रयाञ्चकार, जिह्राय । ह्रेता । ह्रेष्यति । जिह्रेतु । अजिह्रेत् । जिह्रीयात् । ह्रीयात् । अह्रैषीत् । अह्रेष्यत् ॥ **पॄ** पालनपूरणयोः ॥४॥

**६१०. अर्तिपिपर्त्योश्च ७।४।७७॥**

अभ्यासस्य इकारोऽन्तादेशः स्यात् श्लौ । पिपर्ति ॥

---

| **भी लुङ्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अभैषीत् | अभैष्टाम् | अभैषुः |
| | मध्यमपुरुष | अभैषीः | अभैष्टम् | अभैष्ट |
| | उत्तमपुरुष | अभैषम् | अभैष्व | अभैष्म |

**लृङ्मा-** स्य प्रत्ययको इट् हुँदैन । षत्व, ति र सिका इकारको लोप, तस्, थस्, थ, मिप्का स्थानमा- ताम्, तम्, त, अम्, आदेश, वस्, मस्का सकारको लोप, "अतो दीर्घो यञि"ले दीर्घ, यी प्रक्रिया हुन्छन् ।

| **भी लृङ्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अभेष्यत् | अभेष्यताम् | अभेष्यन् |
| | मध्यमपुरुष | अभेष्यः | अभेष्यतम् | अभेष्यत |
| | उत्तमपुरुष | अभेष्यम् | अभेष्याव | अभेष्याम |

ह्री धातु लाजमान्नु अर्थमा छ । यो धातु परस्मैपदी हो । (अनिट् अकर्मक )

**जिह्रेति-** ह्री लट्, तिप्, शप्, श्लु, द्वित्व, अभ्यासकार्य, गुण भयो, 'जिह्रेति' सिद्ध भयो ।

**जिह्रीतः-** ह्री लट्, तस्, शप्, श्लु, द्वित्व, अभ्यासकार्य, रुत्व, विसर्ग भयो, 'जिह्रीतः' सिद्ध भयो ।

**जिह्रियति-** झिमा पूर्ववत् 'जिह्री+झि' भएपछि, "अदभ्यस्तात्"ले झिका झकारका स्थानमा अत्, 'जिह्री+अति' यहाँ "इको यणचि"लाई बाधेर "अचि श्नु०"ले इयङ् पायो, बाधेर "सार्वधातुका०"ले गुण पाएकोमा, ङित्वाद्, गुणनिषेध भएपछि, "बाधकाभावे०" लाएर इयङ् भयो, 'जिह्रियति' सिद्ध भयो । ह्रीको ईकार संयोगपूर्वमा भएकोले यहाँ "एरनेकाचो०" लाग्दैन ।

**बाँकी रूप-** जिह्रेषि, जिह्रीथः, जिह्रीथ । जिह्रेमि, जिह्रीवः जिह्रीमः ।

**लिट्मा-** "भीह्रीभृहुवां श्लुवच्च"ले वैकल्पिक आम् हुन्छ र भी धातुमा जस्तै दुई थरी रूप हुन्छन् । आम् नभएको पक्षमा अजादि कित् विभक्तिमा भी धातुमा "एरनेकाचो०"ले यण् हुन्छ, यहाँ "अचिश्नुधातु०"ले इयङ् हुन्छ । संयोग पूर्वमा हुने धातु हुनाले यण् हुन्न ।

आम् भएको पक्षमा- जिह्रयाञ्चकार, जिह्रयाञ्चक्रतुः, जिह्रयाञ्चक्रुः आदि रूप हुन्छन् । आम् नभएको पक्षमा– जिह्राय, जिह्रियतुः, जिह्रियुः । जिह्रयिथ, जिह्रेथ आदि रूप हुन्छन् ।

यो ह्री धातु भी धातु जस्तो नै हो । तर यसमा "भियोऽन्यतरस्याम्" लाग्दैन भी धातुमा यण् हुने स्थलमा इयङ् हुन्छ । यही सम्झेर अरू रूप पनि सिद्ध गर्नू । सम्पूर्ण लकारका प्रथमपुरूष एकवचनका रूपहरू दिग्दर्शनार्थ मूलमै दिएको छ ।

पॄ धातु पालन गर्नु र पूर्ण गर्नु अर्थमा छ । यो धातु दीर्घ ॠकारान्त हुनाले उदात्त हो । (सेट् सकर्मक)

**अर्तीति-** ऋ धातु र पॄ धातुका अन्त्य अल्का स्थानमा इकार आदेश होस्, श्लुका विषयमा ।

**पिपर्त्ति-** पॄ धातुदेखि लट्, तिप् श्लु, द्वित्व 'पॄ+पॄ+ति' भएपछि, "अर्तिपिपर्त्योश्च"ले

---

**६११. उदोष्ठ्यपूर्वस्य ७।१।१०२**

अङ्गावयवौष्ठ्यपूर्वो य ॠत् तदन्तस्याङ्गस्य उत् स्यात् ॥

**६१२. हलि च ८।२।७७॥**

रेफवान्तयो र्धात्वोरुपधाया इको दीर्घो हलि । पिपूर्तः । पिपुरति । पपार ॥

**६१३. शॄदॄप्रां ह्रस्वो वा ७।४।१२॥**

एषां किति लिटि ह्रस्वो वा स्यात् । पप्रतुः ॥

**६१४. ऋच्छत्यॄताम् ७।४।११॥**

तौदादिकऋच्छेर्ऋधातोर्ॠतां च गुणो लिटि । पपरतुः । पपरुः ॥

---

अभ्यासका ॠकारका स्थानमा इ आदेश हुँदा, "उरण् रपरः" लाएर इर् आदेश, हलादिशेष भयो, 'पिपॄ+ति' भयो, "उदोष्ठ्यपूर्वस्य"लाई बाधेर "सार्वधातुकार्ध०"ले ॠकारका स्थानमा अर्‌गुण भयो, "अचोरहाभ्यां०"ले तकारको द्वित्व भयो, 'पिपर्त्ति' सिद्ध भयो ।

**उदिति**– अङ्गको अवयव ओष्ठस्थानी वर्ण पूर्वमा हुने, जो दीर्घ ॠकार तदन्त अङ्गका स्थानमा ह्रस्व उकार आदेश होस् ।

**हलिचेति**– रेफ र वकार अन्तमा हुने धातुका उपधाका इक्‌का स्थानमा दीर्घ होस्, हल् पर भएमा ।

**पिपूर्तः**– पॄ लट्, तस्, शप्, श्लु, द्वित्व, इर् आदेश, हलादिशेष, 'पिपॄ+तस्' भएपछि "उदोष्ठ्यपूर्वस्य"ले ॠकारका स्थानमा उकार हुँदा, "उरण् रपरः" लाएर उर्‌आदेश भयो, 'पिपुर्+तस्' भयो, "हलिच"ले उपधाको इक् पुका उकारका स्थानमा दीर्घ ऊकार भयो, रुत्व, विसर्ग भयो, 'पिपूर्तः' सिद्ध भयो ।

**पिपुरति**– झिमा पूर्ववत् 'पिपॄ+अति' भएपछि "इको यणचि"लाई बाधेर "उदोष्ठयपूर्वस्य"ले पाएको उकारआदेशलाई बाधेर "सार्वधातुकार्ध०"ले गुण पाएकोमा निषेध भएपछि, बाधकाभावे लाएर "उदोष्ठ्यपूर्वस्य"ले ॠकारका स्थानमा उकार हुँदा उर् भयो, 'पिपुरति' सिद्ध भयो । यस्तै प्रकारले पिपर्षि, पिपूर्थः, पिपूर्थ । पिपर्मि, पिपूर्वः, पिपूर्मः यी रूप सिद्ध हुन्छन् ।

**पपार**– पॄ लिट्, तिप्, णल्, अ, 'पॄ+अ', द्वित्व, 'पॄ+पॄ+अ',अभ्यासको ह्रस्व 'पृ+पॄ+अ' "उरत्"ले अर् हलादिशेष 'पपॄ+अ', "अचो ञ्णिति"ले वृद्धि भयो, 'पपार' सिद्ध भयो ।

**शॄदॄप्रामिति**– शॄ, दॄ पॄ यी धातुहरूका दीर्घ ॠकारका स्थानमा वैकल्पिक ह्रस्व होस्, कित् लिट् पर भएमा ।

**पप्रतुः**– पॄ लिट्, तस्, अतुस्, द्वित्वादि, 'पपॄ+अतुस्' भएपछि "शॄदॄप्रां ह्रस्वो वा"ले पॄका ॠकारका स्थानमा वैकल्पिक ह्रस्व ऋकार भयो, 'पपृ+अतुस्' भएपछि, "सार्वधातुका०"ले पाएको गुण कित्त्वात्, निषेध भयो, "इको यणचि"ले यण् भयो, 'पप्रतुः' सिद्ध भयो ।

**ऋच्छतीति**– तुदादिका ऋच्छ धातुका स्थानमा र ऋ धातुका स्थानमा, दीर्घॠकारान्त धातुका स्थानमा पनि गुण होस्, लिट् पर भएमा ।

**पपरतुः**– ह्रस्व नभएका पक्षमा, 'पपॄ+अतुस्' यहाँ "ऋच्छत्यॄताम्"ले गुण भयो, 'पपरतुः' सिद्ध भयो ।

**पप्रुः/पपरुः**– 'पॄ+उस्' द्वित्वादि, 'पपॄ+उस्' यहाँ "शॄप्रां ह्रस्वो वा"ले ह्रस्व, 'पपॄ+अतुस्' "सार्वधातुकार्धधातुकयोः०"ले पाएको गुण, निषेध भएपछि, "इको यणचि"ले यण् भयो, 'पप्रुः' सिद्ध भयो । ह्रस्व नभएको पक्षमा "ऋच्छत्यॄताम्"ले गुण भयो, 'पपरुः' सिद्ध भयो । यस्तै प्रकारले कित् लिट्‌मा दुई-दुई रूप हुन्छन् । थल्‌मा सेट् धातु हुनाले नित्य इट् हुन्छ । व, म, मा पनि नित्य इट् हुन्छ ।

**पपरिथ**– 'पपॄ+इथ' भएपछि, "ऋच्छत्यॄताम्"ले ॠकारका स्थानमा गुण भयो, 'पपरिथ' सिद्ध भयो ।

---

**६१५. वॄतो वा ७।२।३८।**

वृङ्वृञ्भ्यामॄदन्ताच्चेटो दीर्घो वा स्यान्न तु लिटि । परीता, परिता । परिष्यति, परीष्यति । पिपर्तु । अपिपः । अपिपूर्ताम् । अपिपरुः । पिपूर्यात् । पूर्यात् ।

---

**अरू रूप**– पप्रथुः/पपरथुः, पप्र/पपर । पपार/पपर, पप्रिव/पपरिव; पप्रिम/पपरिम ।

**वॄत इति**– वृङ्धातु र दीर्घ ॠकारान्त धातुदेखि पर रहेका इट्का स्थानमा दीर्घ विकल्पले होस्, लिट् पर भएमा त न होस् ।

**परीता/परिता**– पॄ लुट्, तिप्, डा, तासि प्रत्यय, इट् आगम, टिलोप, 'पॄ+इता' भएपछि, "वॄतो वा"ले इट्का वैकल्पिक दीर्घ भयो, "उदोष्ठचपूर्वस्य"लाई बाधेर "सार्वधातुकार्ध०"ले गुण भयो, 'परीता' सिद्ध भयो । दीर्घ नभएको पक्षमा पनि पूर्ववत गुण भयो, 'परिता' सिद्ध भयो । यसरी यी दुई रूप सिद्ध भए । यसैगरी परीतारौ, परितारौ आदि दुई दुई रूप हुन्छन् ।

**परीष्यति/परिष्यति**– पॄ लृट्, तिप्, स्य प्रत्यय, इट् आगम, 'पॄ+इष्यति' यहाँ "वॄतो वा"ले इट्को दीर्घ विकल्पले भयो, गुण भयो, 'परीष्यति' सिद्ध भयो । दीर्घ नभएमा पनि गुण भयो, 'परिष्यति' सिद्ध भयो । यसरी दुई दुई रूप हुन्छन् ।

यसैगरी अरू लकारमा पनि पॄ धातुदेखि पर रहेको इट्को वैकल्पिक दीर्घ हुन्छ । नतु लिटि भनेकोले थल्मा र व म मा इट्को दीर्घ नभएको हो ।

**पॄ लोट्**–

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | पिपर्तु/पिपूर्तात् | पिपूर्ताम् | पिपुरतु |
| मध्यमपुरुष | पिपूर्हि/पिपूर्तात् | पिपूर्तम् | पिपूर्त |
| उत्तमपुरुष | पिपराणि | पिपराव | पिपराम |

यहाँ गुणनिषेध हुने स्थल अर्थात् कित्, ङित् विभक्ति पर भएमा "उदोष्ठचपूर्वस्य" र हलादि विभक्तिमा "हलि च"ले दीर्घ पनि हुन्छ । उत्तमपुरूषमा आट् पित् हुनाले गुण हुन्छ ।

**लङ्मा– अपिपः**– 'अपिपर्+त्' यस्तो स्थितिमा "हल्ङ्याब्भ्यो०"ले तकारको लोप भयो, विसर्ग भयो, 'अपिपः' सिद्ध भयो ।

**अपिपूर्ताम्**– तस्मा 'अपिपृताम्' यहाँ गुणनिषेध भएपछि, "उदोष्ठचपूर्वस्य"ले उर् आदेश हुन्छ । "हलि च"ले दीर्घ हुन्छ र 'अपिपूर्ताम्' सिद्ध हुन्छ ।

**अपिपरुः**– 'अपिपॄ+झि' भएपछि "उभे अभ्यस्तम्"ले अभ्यस्त सञ्ज्ञा भयो, "सिजभ्यस्त"ले जुस् भयो, "जुसि च"ले गुण भयो, 'अपिपरुः' सिद्ध भयो ।

**अपिपः**– सिप्मा 'अपिपर्+स्' यहाँ "हल् ङ्याब्भ्यो०"ले सकारको लोप र रेफको विसर्ग हुन्छ ।

**अपिपूर्तम्, अपिपूर्त**– थस् थमा "उदोष्ठचपूर्वस्य"ले उर् र दीर्घ हुन्छ ।

**अपिपरम्**– मिप्मा पित्वाद् गुण हुन्छ ।

**अपिपूर्व, अपिपूर्म**– वस्, मस्मा पूर्ववत् उर्, दीर्घ हुन्छ ।

**विधिलिङ्मा**– 'पिपॄ+यास्+त्', सलोप, उर्, दीर्घ, 'पिपूर्यात्' सिद्ध भयो । यस्तै प्रकारले पिपूर्याताम्, पिपूर्युः । पिपूर्याः, पिपूर्यातम्, पिपूर्यात । पिपूर्याम्, पिपूर्याव, पिपूर्याम । यी रूप हुन्छन् ।

**पूर्यात्** –आशीर्लिङ्मा 'पॄ+ति' यहाँ शप्, श्लु आदि नहुने हुनाले 'पॄ+यास्+त्' यहाँ उर्, दीर्घ, 'पूर्+यास्+त्' "स्कोः संयोगाद्योः०"ले सकारको लोप, 'पूर्यात्' सिद्ध भयो । तस् आदि

अपारीत् ॥

६१६. **सिचि च परस्मैपदेषु** ७।२।४०॥

अत्र इटो न दीर्घः । अपारिष्टाम् । अपरीष्यत्, अपरिष्यत् ॥ **ओहाक्** त्यागे ॥५॥ जहाति ॥

६१७. **जहातेश्च** ६।४।११६॥

इद्वा स्याद्धलादौ क्ङिति सार्वधातुके । जहितः ॥

६१८. **ई हल्यघोः** ६।४।११३॥

श्नाभ्यास्योरात ईत् स्यात् सार्वधातुके क्ङिति हलादौ न तु घोः । जहीतः ॥

---

विभक्तिमा यस्तै प्रकारले पूर्यास्ताम्, पूर्यासुः आदि रूप हुन्छन् ।

**सिचि चेति-** परस्मैपद पर भएको सिच् पर भएका वृङ्, वृञ् र दीर्घऋकारान्त धातुदेखि पर रहेको इट्का स्थानमा दीर्घ नहोस् ।

**लुङ्मा- अपारीत्-** 'अपॄ+इस्+ईत्' यहाँ सिच्का इट्को दीर्घ पाएमा "सिचि च०"ले दीर्घ निषेध भयो, "सिचि वृद्धिः परस्मैपदेषु"ले वृद्धि भयो, "इट ईटि"ले सकारको लोप भयो, सवर्ण दीर्घ भयो, 'अपारीत्' सिद्ध भयो ।

अपारीत् यहाँ इट्को दीर्घ नगरेमा पनि गरेमा पनि रूप यौटै हुन्छ, तर "समुद्रे पर्जन्य वल्लक्षणप्रवृत्तिः" यो परिभाषा अनुसार दीर्घ निषेध देखाउनु ठीक हुन्छ । दीर्घ निषेध गरेको फल 'अपारिष्टाम्' आदिमा देखिन्छ ।

**अपारिष्टाम्-** तस्मा 'अपॄ+इस्+ताम्' भएपछि "वृतो वा"ले इट्को दीर्घ पाएकोमा "सिचि च परस्मैपदेषु"ले निषेध भयो, पॄका ॠकारका स्थानमा "सिचि वृद्धिः परस्मैपदेषु"ले वृद्धि भयो, षत्व, ष्टुत्व भयो, 'अपारिष्टाम्' सिद्ध भयो । यस्तै प्रकारले- अपारिषुः । अपारीः, अपारिष्टम्, अपारिष्ट । अपारिषम्, अपारिष्व, अपारिष्म यी रूप हुन्छन् ।

**लृङ्मा-** "वृतो वा"ले इट्को वैकल्पिक दीर्घ हुन्छ ।

परस्मैपदमा- अपरीष्यत्, अपरिष्यत् आत्मनेपदमा-अपरीष्यत अपरिष्यत आदि रूप हुन्छन् ।

ओहाक् धातु छोड्नु अर्थमा छ । ओकार र ककारको इत्संज्ञा हुन्छ । यो धातु पस्मैपदी अनिट् सकर्मक हो ।

**लट्मा-** हलादि विभक्तिमा आकारका स्थानमा "जहातेश्च"ले एकपक्षमा ह्रस्व इकार हुन्छ । नभएको पक्षमा "ई हल्यघोः"ले दीर्घ ईकार हुन्छ । अजादि विभक्तिमा "श्नाभ्यस्तयोरात"ले आकारको लोप हुन्छ ।

**जहाति-** हा लट्, तिप्, शप्, श्लु, द्वित्व, अभ्यासकार्य भयो, 'जहाति' सिद्ध भयो ।

**जहातेरिति-** [८८] ओहाक् धातुका अन्त्य अल्का स्थानमा ह्रस्व इकार आदेश विकल्पले होस्, कित्, ङित् सार्वधातुकसंज्ञक प्रत्यय पर भएमा ।

**ई हलीति-** श्ना प्रत्यय र अभ्यस्तसंज्ञक धातुका आकारका स्थानमा दीर्घईकार आदेश होस्, सार्वधातुकसंज्ञक कित् ङित् हलादि प्रत्यय परभएमा, घुसंज्ञकधातुको त नहोस् ।

**जहितः/जहीतः-** हा लट्, तस्, शप्, श्लु, द्वित्वादि भएपछि, 'जहा+तस्' भयो, यहाँ "जहातेश्च"ले जहाका आकारका स्थानमा वैकल्पिक ह्रस्व इकार भयो, 'जहितस्' भयो, सकारको रुत्व, विसर्ग भयो, 'जहितः' सिद्ध भयो । ह्रस्व इकार नभएका पक्षमा 'जहा+तस्' यहाँ

---

८८ जहाति रूप हुने हा धातु भनेकोले यहाँ ओहाक् धातु लिइन्छ ।

**६१९. श्नाभ्यस्तयोरातः ६।४।११२॥**

अनयोरातो लोपः क्ङिति सार्वधातुके । जहति । जहौ । हाता । हास्यति । जहातु, जहितात्, जहीतात् ॥

**६२०. आ च हौ ६।३।११७॥**

जहातेर्हौ परे आ स्याच्चादिदीतौ । जहाहि, जहिहि, जहीहि ।

---

"ई हल्यघोः"ले यो धातु अभ्यस्तसंज्ञक भएको र घुसंज्ञक नहुनाले, जहाका आकारका स्थानमा दीर्घ ईकार भयो, 'जहीतस्' सकारको रुत्व, विसर्ग भयो, 'जहीतः' सिद्ध भयो ।

**श्नाभ्यस्तेति**- श्ना प्रत्यय र अभ्यस्त संज्ञक धातुका आकारको लोप होस्, कित् ङित् सार्वधातुकसंज्ञक प्रत्यय पर भएमा ।

**जहति**- हा लट्, झि, शप्, श्लु, द्वित्व, अभ्यासकार्य, 'जहा+झि', "झोऽन्तः"लाई बाधेर "अदभ्यस्तात्"ले झिका झकारका स्थानमा अत्, 'जहा+अति' भएपछि, "श्नाभ्यस्तयोरातः"ले आकारको लोप भयो, 'जहति' सिद्ध भयो । बाँकी- जहासि, जहिथः/जहीथः, जहिथ/जहीथ । जहामि, जहिवः/जहीवः, जहिमः/जहीमः यी रूप हुन्छन् ।

**जहौ**- हा लिट्, तिप्, णल्, "आत औ णलः"ले औ, 'हा+औ', द्वित्व, अभ्यासकार्य, 'जहा+औ', "वृद्धिरेचि"ले वृद्धि भयो, 'जहौ' सिद्ध भयो ।

**जहतुः**- तस्मा पूर्ववत् 'जहा+अतुस्' भएपछि, "आतो लोप इटि च"ले आकारको लोप भयो, 'जहतुः' सिद्ध भयो । यस्तै प्रकारले झिमा 'जहुः' सिद्ध हुन्छ ।

**जहिथ/जहाथ**- सिप्मा 'हा+थ' यहाँ हा अजन्त, तासि प्रत्ययमा नित्यानिट् धातु हुनाले थल्को वैकल्पिक इट् आगम भयो । द्वित्वादि भएपछि आकारको लोप भयो, 'जहिथ' सिद्ध भयो । इट् नभएको पक्षमा पनि द्वित्वादि भएर 'जहाथ' सिद्ध भयो ।

यस्तै प्रकारले जहथुः, जह यी रूप सिद्ध हुन्छन् । उत्तमपुरुष णल्मा जहौ यो रूप हुन्छ । व, ममा क्रादिनियमले नित्य इट् हुन्छ ।

**जहिव, जहिम**- 'जहा+इव', 'जहा+इम' यहाँ "आतो लोप इटि च"ले आकारको लोप भयो, 'जहिव', 'जहिम' यी दुई रूप सिद्ध भए ।

**हाता**- हा लुट्, तिप्, तासि प्रत्यय 'हा+तास्+ति', "एकाच्च उपदेशे"ले **इट्** आगमको निषेध डा आदेश, 'हा+तास्+आ', टिलोप भयो, 'हाता' सिद्ध भयो । हातारौ, हातारः आदि रूप पनि यसै गरी जान्नू ।

**हास्यति**- हा लृट्, तिप्, स्य प्रत्यय, 'हा+स्य+ति' इट् आगमको निषेध 'हास्यति' सिद्ध भयो । यसैगरी हास्यतः, हास्यन्ति आदि रूप सिद्ध हुन्छन् ।

विध्यादि लोट् तिप्मा जहातु यो रूप हुन्छ । आशीर्लोट्मा तातङ् भएको पक्षमा "जहातेश्च" र "ई हल्यघोः" यी दुई सूत्र लाग्छन् र जहितात्/जहीतात् यी दुई रूप हुन्छन् । नभएको पक्षमा 'जहातु' नै हुन्छ । तस्मा जहिताम्, जहीताम् दुई रूप हुन्छन् । झिमा अत् आदेश, उत्व, 'श्नाभ्यस्तयो०' ले आकारको लोप भएर 'जहतु' यो रूप हुन्छ ।

**आ चेति**- जहाति रूप हुने हा धातुका आकारका स्थानमा हि पर भएमा आकार आदेश होस्, चकार पढ्नाले ह्रस्व इकार दीर्घ ईकार पनि होऊन् ।

**जहाहि/जहिहि/जहीहि**- हा लोट्, शप्, श्लु, द्वित्व, हि आदेश, 'जहा+हि" भएपछि, "आच हौ" यही एक सूत्रले जहाका आकारका स्थानमा आकार ह्रस्व इकार, दीर्घ इकार क्रमशः भयो । र, उक्त रूप सिद्ध भए ।

अजहात् । अजहुः ॥

**६२१. लोपो यि ६।४।११८॥**

जहातेरालोपो यादौ सार्वधातुके । जह्यात् । एर्लिङि । हेयात् ।

---

आशीर्लोट्मा तातङ् पक्षमा पूर्ववत् जहितात्/जहीतात् रूप हुन्छन् । तातङ् नभएको पक्षमा जहाहि/जहिहि/जहीहि तीन रूप हुन्छन् । थस्, थमा जहितम्/जहीतम्, जहित/जहीत, यी रूप हुन्छन् ।

मिप्, वस्, मस्मा आट् भएपछि 'जहा+आनि', 'जहा+आव', 'जहा+आम', यहाँ "अकः सवर्णे दीर्घः"ले दीर्घ भएर जहानि, जहाव, जहाम यी रूप हुन्छन् । पित्वात् आकार लोप हुँदैन ।

**अजहात्**- लङ्मा 'हा+ल्' 'अहा+ल्', शप्, श्लु, द्वित्व, हलादिशेष आदिकार्य पूर्ववत् भयो । 'अजहात्' सिद्ध भयो । तस्, थस्, थ, वस्, मस्मा लट्मा जस्तै इत्व र ईत्व विकल्पले हुन्छ । सबै रूप तल दिइन्छ ।

| **ओहाक् लङ्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अजहात् | अजहिताम्/अजहीताम् | अजहुः |
| | मध्यमपुरुष | अजहाः | अजहितम्/अजहीतम् | अजहित/अजहीत |
| | उत्तमपुरुष | अजहाम् | अजहिव/अजहीव | अजहिम/अजहीम |

**लोप इति**- हा धातुका आकारको लोप होस्, यकार आदिमा हुने सार्वधातुक प्रत्यय परभएमा ।

**जह्यात्**- हा धातुदेखि विध्यादि अर्थमा लिङ्, तिप्, शप्, श्लु, यासुट् आगम, 'हा+यास्+ति' भएपछि यहाँ "लोपो यि"लाई बाधेर पहिले द्वित्व भयो, 'जहा+यास्+ति' भयो, यकार आदिमा हुने, सार्वधातुकप्रत्यय पर हुनाले "लोपो यि"ले जहाका आकारको लोप भयो, 'जह्यास्+ति' तिका इकारको "इतश्च"ले लोप भयो, "लिङः सलोपो॰"ले सकारको लोप भयो, 'जह्यात्' सिद्ध भयो । यस्तै प्रकारले आकारको लोप र सकारको लोप भएपछि अरू रूप पनि सिद्ध हुन्छन् ।

| **ओहाक् वि.लि.-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | जह्यात् | जह्याताम् | जह्युः |
| | मध्यमपुरुष | जह्याः | जह्यातम् | जह्यात |
| | उत्तमपुरुष | जह्याम् | जह्याव | जह्याम |

**एर्लिङीति**- आशीर्लिङ्मा "एर्लिङि"ले एत्व हुन्छ ।

**हेयात्**- आशीर्लिङ्मा शप् नहुने हुनाले श्लु भएन, द्वित्व पनि भएन । 'हायास्ति' यहाँ "एर्लिङि"ले एत्व भयो, 'हेयास्+ति' इकारको लोप, सकारको संयोगादिलोप भयो, 'हेयात्' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि जान्नू ।

| **ओहाक् वि.लि.-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | हेयात् | हेयास्ताम् | हेयासुः |
| | मध्यमपुरुष | हेयाः | हेयास्तम् | हेयास्त |
| | उत्तमपुरुष | हेयासम् | हेयास्व | हेयास्म |

अहासीत् । अहास्यत् ॥ **माङ्** माने शब्दे च ॥६॥

६२२. **भृञामित्** ७।४।७६॥

भृञ् माङ् ओहाङ् एषां त्रयाणामभ्यासस्य इत्स्यात् श्लौ । मिमीते । मिमाते । मिमते । ममे । माता । मास्यते । मिमीताम् ।

---

**अहासीत्**– हा धातुदेखि लुङ्, अट् आगम ति, च्लि, सिच्, इट् आगमको निषेध, 'अहा+स्+ति' भयो, तिका इकारको लोप इट् आगम 'अहा+स्+ईत्' यहाँ "यमरमनमातां सक्च"ले सक् आगम र सिच्को इट् भयो, 'अहास्+इस्+ईत्' "इट ईटि"ले सकारको लोप, 'अहासि+ईत्', दीर्घ भयो, 'अहासीत्' सिद्ध भयो ।

**अहासिष्टाम्**- पूर्ववत् 'अहा+स्+ताम्' भएपछि, सक् आगम र इट् आगम भयो, 'आहास्+इस्+ताम्' षत्व, ष्टुत्व, 'अहासिष्टाम्' सिद्ध भयो । सबै रूप तल दिइन्छ ।

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | अहासीत् | अहासिष्टाम् | अहासिषुः |
| मध्यमपुरुष | अहासीः | अहासिष्टम् | अहासिष्ट |
| उत्तमपुरुष | अहासिषम् | अहासिष्व | अहासिष्म |

**माङ्** धातु नाप्नु र शब्द गर्नु अर्थमा छ । यो धातु ङित्वात् आत्मनेपदी हो । (अनिट् सकर्मक)

**भृञामिति**– भृञ् धातु, माङ् धातु, ओहाङ् धातु यी तीन धातुका अभ्यासका स्थानमा ह्रस्व ईकार होस्, श्लुका विषयमा ।

**मिमीते**- मा लट्, त, शप्, श्लु, द्वित्व, 'मामा+ते', "भृञामित्"ले अभ्यासका आकारका स्थानमा इकार भयो, पल्लो माका आकारका स्थानमा "ई हल्यघोः"ले दीर्घ ईकार भयो, "टित आत्मनेपदानां टेरे"ले एत्व भयो, 'मिमीते' सिद्ध भयो ।

**मिमाते**– 'मा+मा+आताम्', "भृञामित्"ले अभ्यासका आकारका स्थानमा इकार "टित आत्मनेपदानां०"ले एत्व, 'मिमा+आते' माका आकारको "श्नाभ्यस्तयोरातः"ले लोप भयो, 'मिमाते' सिद्ध भयो । अरू रूप पनि यस्तै प्रकारले हुन्छन् ।

| | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| **मा. लट्**– | प्रथमपुरुष | मिमीते | मिमाते | मिमते |
| | मध्यमपुरुष | मिमीषे | मिमाथे | मिमीध्वे |
| | उत्तमपुरुष | मिमे | मिमीवहे | मिमीमहे |
| **मा. लिट्**– | प्रथमपुरुष | ममे | ममाते | ममिरे |
| | मध्यमपुरुष | ममिषे | ममाथे | ममिध्वे |
| | उत्तमपुरुष | ममे | ममिवहे | ममिमहे |

**लुट्मा**– माता आदि । **लृट्मा**– मास्यते आदि रूप हुन्छन् ।

| | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| **मा.लोट्**– | प्रथमपुरुष | मिमीताम् | मिमाताम् | मिमताम् |
| | मध्यमपुरुष | मिमीष्व | मिमाथाम् | मिमीध्वम् |
| | उत्तमपुरुष | मिमै | मिमावहै | मिमामहै |

यहाँ आट् पित् भए पनि यहाँ लघूपध अङ्ग छैन र गुण हुँदैन ।

अमिमीत । मिमीत । मासीष्ट । अमास्त । अमास्यत ॥ **ओहाङ्** गतौ ॥७॥ जिहीते । जिहाते । जिहते ।

| मा. लङ्– | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अमिमीत | अमिमाताम् | अमिमत |
| | मध्यमपुरुष | अमिमीथाः | अमिमाथाम् | अमिमीध्वम् |
| | उत्तमपुरुष | अमिमि | अमिमीवहि | अमिमीमहि |

विधिलिङ्मा, "ई हल्यघोः"ले ईत्व हुन्छ ।

| मा. वि.लि– | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | मिमीत | मिमीयाताम् | मिमीरन् |
| | मध्यमपुरुष | मिमीथाः | मिमीयाथाम् | मिमीध्वम् |
| | उत्तमपुरुष | मिमीय | मिमीवहि | मिमीमहि |
| मा. आ.लि.– | प्रथमपुरुष | मासीष्ट | मासीयास्ताम् | मासीरन् |
| | मध्यमपुरुष | मासीष्ठाः | मासीयास्थाम् | मासीध्वम् |
| | उत्तमपुरुष | मासीय | मासीवहि | मासीमहि |
| मा. लुङ्– | प्रथमपुरुष | अमास्त | अमासाताम् | अमासत |
| | मध्यमपुरुष | अमास्थाः | अमासाथाम् | अमाध्वम् |
| | उत्तमपुरुष | अमासि | अमास्वहि | अमास्महि |
| मा. लृङ्– | प्रथमपुरुष | अमास्यत | अमास्येताम् | अमास्यन्त |
| | मध्यमपुरुष | अमास्यथाः | अमास्येथाम् | अमास्यध्वम् |
| | उत्तमपुरुष | अमास्ये | अमास्यावहि | अमास्यामहि |

**उपसर्ग योगमा–**

प्रमिमीते (प्रमाण दिन्छ)
उपमिमीते (तुलना गर्छ)
निर्मिमीते (बनाउँछ, निर्माण गर्छ)
अनुमिमीते (अनुमान गर्छ)

**ओहाङ्** धातु हिड्नु अर्थमा । ओ र ङ् को इत्संज्ञा लोप हुन्छ ङित् हुनाले आत्मनेपदी धातु हो । (अनिट् सकर्मक)

**जिहीते–** हा लट्, त, शप्, श्लु, द्वित्व, अभ्यासकार्य, एत्व, 'जहा+ते' अभ्यासका आकारका स्थानमा "भृञामित्"ले इकार, हाका आकारका स्थानमा "ई हल्यघोः"ले दीर्घ ईकार भयो, 'जिहीते' सिद्ध भयो ।

जहाति रूप हुने हा धातु यो हैन, अतः सार्वधातुक कित् ङित् विभक्ति पर भएमा "जहातेश्च" यो सूत्र लाग्दैन ।

**जिहाते–** आताम् मा 'जहा+आते' भएपछि, भृञामित्ले अभ्यासको आकारको इकार भयो, "श्नाभ्यस्तयोः०"ले आकारको लोप भयो, 'जिहाते' सिद्ध भयो ।

**जिहते–** झ मा 'जहा+अते' अभ्यासको इत्व, आलोप, 'जिहते' सिद्ध भयो ।

**जिहीषे–** थास्मा 'जहा+से' भएपछि, अभ्यासको इत्व, आकारको "ई हल्यघोः"ले ईत्व,

षत्व भयो, 'जिहीषे' सिद्ध भयो । बाँकी रूप- जिहाथे, जिहीध्वे । जिहे, जिहीवहे, जिहीमहे ।

**लिट्मा**– हा, लिट्, त, एश्, द्वित्व, अभ्यासकार्य, आकार लोप भयो, 'जहे' सिद्ध भयो । यस्तै प्रकारले अजादिमा आलोपमात्र र हलादिमा इट् आगम भएपछि आलोप हुन्छ । "एकाच०"ले इट्को निषेध भएपछि, सबै हलादि विभक्तिको हा धातुमा क्रादिनियमात् नित्य इट् आगम हुन्छ ।

| **ओहाङ्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | जहे | जहाते | जहिरे |
| | मध्यमपुरुष | जहिषे | जहाथे | जहिढ्वे / जहिध्वे |
| | उत्तमपुरुष | जहे | जहिवहे | जहिमहे |

**लुट्मा**– हाता, हातारौ, हतारः । हातासे, हातासाथे आदि रूप हुन्छन् ।

**लृट्मा**– हास्यते, हास्येते, हास्यन्ते आदि रूप हुन्छन् ।

**लोट्मा**– विशेष सूत्र छैनन्, पूर्वसूत्र स्मरण गरेर रूप सिद्धि गर्नू

| **ओहाङ् लोट्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | जिहीताम् | जिहाताम् | जिहताम् |
| | मध्यमपुरुष | जिहीष्व | जिहाथाम् | जिहीध्वम् |
| | उत्तमपुरुष | जिहै | जिहावहै | जिहामहै । |
| **ओहाङ् लुङ्-** | प्रथमपुरुष | अजिहीत | अजिहाताम् | अजिहत |
| | मध्यमपुरुष | अजिहीथाः | अजिहाथाम् | अजिहीध्वम् |
| | उत्तमपुरुष | अजिहि | अजिहीवहि | अजिहीमहि |
| **ओहाङ् वि.लि.-** | प्रथमपुरुष | जिहीत | जिहीयाताम् | जिहीरन् |
| | मध्यमपुरुष | जिहीथाः | जिहीयाथाम् | जिहीध्वम् |
| | उत्तमपुरुष | जिहीय | जिहीवहि | जिहीमहि |

यहाँ सीयुट्को सलोप भएपछि सर्वत्र अजादि विभक्ति हुनछ "ई हल्यघोः" लाग्दैन "श्नाभ्यस्तयोः"ले आलोप हुन्छ ।

**आशीर्लिङ्**– आर्धधातुक लिङ् हुनाले सलोप भएन अनिट् धातु हुनाले इट् हुँदैन । तकार, थकारको "सुट तिथोः"ले सुट् आगम हुन्छ ।

**हासीष्ट**– 'हासीय्+स्त', "लोपो व्योर्वलि"ले यलोप 'हासीस्त', षत्व, ष्टुत्व, 'हासीष्ट' सिद्ध भयो ।

| **ओहाङ् आ.लि.-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | हासीष्ट | हासीयास्ताम् | हासीरन् |
| | मध्यमपुरुष | हासीष्ठाः | हासीयास्थाम् | हासीध्वम् |
| | उत्तमपुरुष | हासीय | हासीवहि | हासीमहि । |

| **ओहाङ् लुङ्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अहास्त | अहासाताम् | अहासत |
| | मध्यमपुरुष | अहास्थाः | अहासाथाम् | अहाध्वम् |
| | उत्तमपुरुष | अहासि | अहास्वहि | अहास्महि |

अहास्यत ॥ **डुभृञ्** धारणपोषणयोः ॥८॥ बिभर्ति । बिभृतः । बिभ्रति । बिभृते । बिभ्राते । बिभ्रते । बिभराञ्चकार, बभार । बभर्थ । बभृव । बिभराञ्चक्रे, बभ्रे । भर्तासि, भर्तासे ।

---

**लृङ्मा**– अहास्यत, अहास्येताम्, अहास्यन्त इत्यादि रूप हुन्छन् ।

**डुभृञ्** धातु धारण गर्नु र पोषण गर्नु अर्थमा छ । डु र ञ् को इत्संज्ञा लोप हुन्छ । ञित् धातु हुनाले उभयपदी भयो । यो धातु अनिट् सकर्मक हो ।

**बिभर्ति**– भृ लट्, परस्मैपद तिप्, शप्, श्लु द्वित्व, अर्, 'भर्+भृ+ति' अभ्यासकार्य, 'बभृ+ति', "भृञामित्"ले इत्व 'बिभृ+ति', "सार्वधातुकार्धधातुकयोः"ले गुण भयो, 'बिभर्ति' सिद्ध भयो ।

**बिभृतः**– तस्मा पूर्ववत् 'बिभृ+तस्' भएपछि गुण निषेध भयो, 'बिभृतः' सिद्ध भयो ।

**बिभ्रति**– झिमा पूर्ववत् 'बिभृ+झि', झिको झकारका स्थानमा अत् 'बिभृ+अति' गुण निषेध, "इको यणचि"ले यण् भयो, 'बिभ्रति' भयो । बाँकी रूप– बिभर्षि, बिभृथः, बिभृथ । बिभर्मि, बिभृव, बिभृम ।

**लट्**– आत्मनेपदमा सबै ङित् विभक्ति हुनाले सर्वत्र गुणनिषेध हुन्छ । आथाम्मा र इट्मा यण् हुन्छ । अरू ठाउँमा ऋकार यथावत् रहन्छ । सबै रूप तल दिइन्छ ।

| **भृ लट्** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | बिभृते | बिभ्राते | बिभ्रते |
| | मध्यमपुरुष | बिभृषे | बिभ्राथे | बिभृध्वे |
| | उत्तमपुरुष | बिभ्रे | बिभृवहे | बिभृमहे |

लिट् लकारमा "भीह्रीभृहुवाम्०"ले वैकल्पिक आम् हुन्छ । आम् प्रत्यय भएको पक्षमा कृ, भू, अस् धातुको अनुप्रयोग पूर्ववत् हुन्छ । कृ धातुको अनुप्रयोगमा बिभराञ्चकार, बिभराञ्चक्रे रूप र भू धातु र अस् धातुको अनुप्रयोगमा बिभराम्बभूव, बिभरामास आदि रूप हुन्छन् ऊह गर्नु ।

**आम् प्रत्यय नभएको पक्षमा लिट्**– परस्मैपदमा "कृसृभृवृ०"ले इट्निषेध भएपछि, ऋदन्त धातु नै हुनाले थल्मा "ऋतो भारद्वाजस्य" यो नियम पनि लागेन र अन्यत्र पनि इट् भएन कृ धातुको जस्तै रूप भए ।

| | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| **भृ लिट् परस्मैपद**– | प्रथमपुरुष | बभार | बभ्रतुः | बभ्रुः |
| | मध्यमपुरुष | बभर्थ | बभ्रथुः | बभ्र |
| | उत्तमपुरुष | बभार/बभर | बभृव | बभृम |

आत्मनेपदमा पनि से, ध्वे, वहे, महेमा इट् हुँदैन । "कृसृभृवृ०"ले निषेध हुन्छ ।

| | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| **भृ लिट् आत्मनेपद**– | प्रथमपुरुष | बभ्रे | बभ्राते | बभ्रिरे |
| | मध्यमपुरुष | बभृषे | बभ्राथे | बभृढ्वे |
| | उत्तमपुरुष | बभ्रे | बभृवहे | बभृमहे |

**लुट्**– परस्मैपदमा भर्तासि आदि र आत्मनेपदमा भर्तासे आदि रूप हुन्छन् ।

भरिष्यति, भरिष्यते । बिभर्तु । बिभराणि । बिभृताम् । अबिभः । अबिभृताम् । अबिभरुः । अबिभृत । बिभृयात्, बिभ्रीत । भ्रियात् । भृषीष्ट । अभार्षीत् । अभृत । अभरिष्यत्, अभरिष्यत ॥

लृट्मा- "ऋद्धनोः स्ये"ले इट् आगम हुन्छ ।

परस्मैपदमा भरिष्यति आदि र आत्मनेपदमा भरिष्यते आदि रूप हुन्छन् ।

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| **भृ.लोट् परस्मैपद-** | प्रथमपुरुष | बिभर्तु/बिभृतात् | बिभृताम् | बिभ्रतु |
| | मध्यमपुरुष | बिभृहि/बिभृतात् | बिभृतम् | बिभृत |
| | उत्तमपुरुष | बिभराणि | बिभराव | बिभराम |
| **भृ. लोट् आत्मनेपद-** | प्रथमपुरुष | बिभृताम् | बिभ्राताम् | बिभ्रताम् |
| | मध्यमपुरुष | बिभृष्व | बिभ्राथाम् | बिभृध्वम् |
| | उत्तमपुरुष | बिभरै | बिभरावहै | बिभरामहै |
| **भृ.लङ् परस्मैपद-** | प्रथमपुरुष | अबिभः | अबिभृताम् | अबिभरुः |
| | मध्यमपुरुष | अबिभः | अबिभृतम् | अबिभृत |
| | उत्तमपुरुष | अबिभरम् | अबिभृव | अबिभृम |
| **भृ.लङ् आत्मनेपद-** | प्रथमपुरुष | अबिभृत | अबिभ्राताम् | अबिभ्रत |
| | मध्यमपुरुष | अबिभृथाः | अबिभ्राथाम् | अबिभृध्वम् |
| | उत्तमपुरुष | अबिभ्रि | अबिभृवहि | अबिभृमहि |

**बिधिलिङ्-** परस्मैपद बिभृयात्, बिभृयाताम् आदि रूप हुन्छन् । आत्मनेपदमा विभ्रीत बिभ्रीयाताम् आदि रूप हुन्छन् ।

**आशीर्लिङ् परस्मैपदमा-** भ्रियात्, भ्रियास्ताम्, भ्रियासुः आदि **रूप हुन्छन्** । "रिङ्शयग्लिङ्क्षु"ले रिङ् आदेश हुन्छ । आत्मने पदमा "उश्च"ले कित्त्व हुन्छ । भृषीष्ट, भृषीयास्ताम्, भृषीरन् आदि रूप हुन्छन् ।

लुङ् परस्मैपदमा "सिचि वृद्धिः परस्मैपदेषु" लाग्छ ।

| **भृ.लुङ् परस्मैपद-** | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | आभार्षीत् | अभार्ष्टाम् | अभार्षुः |
| | मध्यमपुरुष | अभार्षीः | अभार्ष्टम् | अभार्ष्ट |
| | उत्तमपुरुष | अभार्षम् | अभार्ष्व | अभार्ष्म |

आत्मनेपदमा "उश्च"ले कित्व "ह्रस्वादङ्गात्"ले सिच्को लोप हुन्छ ।

| **भृ.लुङ् आत्मनेपद-** | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अभृत | अभृषाताम् | अभृषत |
| | मध्यमपुरुष | अभृथाः | अभृषाथाम् | अभृढ्वम् |
| | उत्तमपुरुष | अभृषि | अभृष्वहि | अभृष्महि |

लृङ् लकारमा 'ऋद्धनोः स्ये'ले नित्य इट् आगम हुन्छ । अभरिष्यत्, अभरिष्यत आदि रूप हुन्छन् ।

डुदाञ् दाने ॥९॥ ददाति । दत्तः । ददति । दत्ते । ददाते । ददते । ददौ, ददे । दातासि, दातासे । दास्यति, दास्यते । ददातु ॥

**६२३. दाधा घ्वदाप् १।१।२०॥**

दारूपा धारूपाश्च धातवो घुसंज्ञाः स्युर्दाप्दैपौ विना ॥

---

**डुदाञ्** धातु दान गर्नु अर्थमा छ । डु र ञ् को इत्संज्ञा र लोप हुन्छ । ञित्वात् उभयपदी हो । (अनिट् सकर्मक)

**ददाति**– दा लट्, तिप्, शप्, श्लु, द्वित्व, हलादिशेष, ह्रस्व भयो, 'ददाति' सिद्ध भयो ।

**दत्तः**– पूर्ववत् 'ददा+तस्' "श्नाभ्यस्तयोः"ले आकारको लोप चर्त्व भयो, 'दत्तः' सिद्ध भयो ।

**ददति**– 'ददा+झि' यहाँ "अदभ्यस्तात्"ले अत् आकारको लोप भयो, 'ददति' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध हुन्छन् ।

| दा.लट् प.– | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | ददाति | दत्तः | ददति |
| | मध्यमपुरुष | ददासि | दत्थः | दत्थ |
| | उत्तमपुरुष | ददामि | दद्वः | दद्मः |

आत्मनेपदमा ङित्वात् सर्वत्र आकार लोप हुन्छ ।

| दा. लट् आ.– | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | दत्ते | ददाते | ददते |
| | मध्यमपुरुष | दत्से | ददाथे | दद्ध्वे |
| | उत्तमपुरुष | ददे | दद्वहे | दद्महे |

**लिट्**– परस्मैपदमा चुत्व जश्त्वबाहेक हा धातुमा जस्तै प्रक्रिया हुन्छ ।

| दा.लिट् प.– | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | ददौ | ददतुः | ददुः |
| | मध्यमपुरुष | ददिथ/ददाथ | ददथुः | दद |
| | उत्तमपुरुष | ददौ | ददिव | ददिव |

**लिट् आत्मनेपदमा**– चुत्व जश्त्व बाहेक ओहाङ् गतौको लिट्मा जस्तै प्रक्रिया हुन्छ ।

| दा.लिट् आ.– | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | ददे | ददाते | ददिरे |
| | मध्यमपुरुष | ददिषे | ददाथे | ददिध्वे |
| | उत्तमपुरुष | ददे | ददिवहे | ददिमहे |

**लुट्**– परस्मैपद आत्मनेपद दुवैमा प्रथमपुरुषमा दाता, दातारौ, दातारः । त्यसपछि परस्मैपदमा दातासि आदि रूप र आत्मनेपदमा दातासे आदि रूप हुन्छन् ।

**लृट्मा**– परस्मैपदमा दास्यति आदि र आत्मनेपदमा दास्यते आदि रूप हुन्छन् ।

लोट् प्रथमपुरूषमा ददातु/दत्तात्, दत्ताम्, ददतु यी रूप हुन्छन् ।

**दाधा घ्विति**– दारूप हुने र धारूप हुने धातु, घुसंज्ञक होऊन्, दाप् धातु र दैप् धातुलाई छोडेर ।

घ्वसोरित्येत्त्वम् । देहि । दत्तम् । अददात्, अदत्त । दद्यात्, ददीत । देयात्, दासीष्ट ।

दाप् र दैप्लाई छोडेर दारूप हुने धातु चार छन्- दा, दाण्, दो, देङ् "आदेच०" लगाएर दो र देको पनि दारूप हुन्छ । एक पटक दा यस्तो रूप हुने भन्ने यसको आशय हो ।

**देहि/दत्तात्**- सिप्मा 'ददा+हि' भएपछि, ददा यसलाई घुसंज्ञा भयो, "घ्वसोरेद्धा०"ले एत्व र अभ्यासलोप भयो, 'देहि' सिद्ध भयो । आशीर्वाद अर्थमा हिका स्थानमा तातङ् भएको पक्षमा आकारको लोप भयो, 'दत्तात्' सिद्ध भयो । थस्, थमा दत्तम्, दत्त यी रूप हुन्छन् । मिप्, वस्, मस्मा ददानि, ददाव, ददाम यी रूप हुन्छन् ।

| | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| **लङ् दा.प-** | प्रथमपुरुष | अददात् | अदत्ताम् | अददुः |
| | मध्यमपुरुष | अददाः | अदत्तम् | अदत्त |
| | उत्तमपुरुष | अददाम् | अदद्व | अदद्म |
| **लङ् दा.आ-** | प्रथमपुरुष | अदत्त | अददाताम् | अददत |
| | मध्यमपुरुष | अदत्थाः | अददाथाम् | अदद्ध्वम् |
| | उत्तमपुरुष | अददि | अदद्वहि | अदद्महि |

**विधिलिङ्**- परस्मैपदमा यासुट् सार्वधातुक ङित् हुनाले सर्वत्र श्नाभ्यस्तयोरातः" ले आकारको लोप हुन्छ ।

| | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| **दा.वि.लि.प.-** | प्रथमपुरुष | दद्यात् | दद्याताम् | दद्युः |
| | मध्यमपुरुष | दद्याः | दद्यातम् | दद्यात |
| | उत्तमपुरुष | दद्याम् | दद्याव | दद्याम |
| **दा.वि.लि.आ.-** | प्रथमपुरुष | ददीत | ददीयाताम् | ददीरन् |
| | मध्यमपुरुष | ददीथाः | ददीयाथाम् | ददीध्वम् |
| | उत्तमपुरुष | ददीय | ददीवहि | ददीमहि |

यहाँ सबै तङ कित् हुनाले सीयुट् आगम पनि कित् हुन्छ र "श्नाभ्यस्तयोरातः"ले सर्वत्र आकारको लोप हुन्छ ।

**आशीर्लिङ्**- परस्मैपदमा "एर्लिङि"ले दाका आकारका स्थानमा एकार हुन्छ ।

| | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| **दा.आ.लि.प.-** | प्रथमपुरुष | देयात् | देयास्ताम् | देयासुः |
| | मध्यमपुरुष | देयाः | देयास्तम् | देयास्त |
| | उत्तमपुरुष | देयासम् | देयास्व | देयास्म |

**आशीर्लिङ्**- आत्मनेपदमा "सीयुट्" यो ङित् भए पनि सार्वधातुकसंज्ञक प्रत्यय नहुनाले आकारको लोप भएन ।

| | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| **दा.लिङ्.आ.-** | प्रथमपुरुष | दासीष्ट | दासीयास्ताम् | दासीरन् |
| | मध्यमपुरुष | दासीष्ठाः | दासीयास्थाम् | दासीध्वम् |
| | उत्तमपुरुष | दासीय | दासीवहि | दासीमहि |

अदात् । अदाताम् । अदुः ॥

**६२४. स्थाघ्वोरिच्च १।२।१७॥**

अनयोरिदन्तादेशः सिच्च कित्स्यादात्मनेपदे । अदित । अदास्यत्, अदास्यत ॥

**डुधाञ्** धारणपोषणयोः ॥१०॥ दधाति ॥

**६२५. दधस्तथोश्च ८।२।३८॥**

द्विरुक्तस्य झषन्तस्य धाञो बशो भष् स्यात् तथोः स्ध्वोश्च परतः । धत्तः ।

---

लुङ्- परस्मैपदमा "गातिस्था०"ले सिच्को लुक् भयो ।

| दा.लुङ्.प.- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अदात् | अदाताम् | अदुः |
| | मध्यमपुरुष | अदाः | अदातम् | अदात |
| | उत्तमपुरुष | अदाम् | अदाव | अदाम । |

**स्थाघ्वोरिति**- स्था धातु र घुसंज्ञक धातुका अन्त्य अल्का स्थानमा इकार आदेश होस्, सिच् पनि कित् होस्, आत्मनेपद पर भएमा ।

**अदित**- दा लुङ्, अट् आगम, त, च्लि, सिच्, इट् निषेध 'अदा+स्+त' यहाँ "स्थाघ्वोरिच्च"ले दाका आकारका स्थानमा इकार भयो, सिच् कित् भयो, कित्वाद् इकारका स्थानमा गुण भएन, "ह्रस्वादङ्गात्"ले सिच्को लोप भयो, 'अदित' भएपछि पुनः अर्को कुरा त लाई पर मानेर "सार्वधातुकार्धधातुकयोः"ले गुण हुँदैन, त ङित छ, अर्को कुरा सिच् लोप गर्ने सूत्र त्रिपादी छ र असिद्ध हुन्छ, सिच् कित् छँदैछ, अतः गुण भएन, 'अदित' सिद्ध भयो ।

**अदिषाताम्**- 'अदा+स्+आताम्' भएपछि, "स्थाघ्वोरिच्च"ले दाका आकारका स्थानमा इकार भयो, सिच् कित् पनि भयो, कित्वात् "सार्वधातुका०"ले गुण पाएको निषेध भयो, षत्व भयो, अदिषाताम् । यस्तै प्रकारले अरू रूप पनि सिद्ध हुन्छन् ।

| दा.लुङ्.आ.- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अदित | अदिषाताम् | अदिषत |
| | मध्यमपुरुष | अदिथाः | अदिषाथाम्, | [८९]अदिढ्वम् |
| | उत्तमपुरुष | अदिषि | अदिष्वहि | अदिष्महि |

**लृङ्**- परस्मैपदमा अदास्यत् आदि रूप र आत्मनेपदमा अदास्यत आदि रूप हुन्छन् । डुधाञ् धातु धारण र पोषण अर्थमा छ । डु र ञ्को इत्संज्ञा र लोप हुन्छ । ञित् धातु हुनाले उभयपदी हो । (अनिट् सकर्मक)

**दधाति**- धा लट्, तिप्, शप्, श्लु, द्वित्व, 'धा+धा+ति', 'ध+धाति' भयो, जश्त्व भयो, 'दधाति', सिद्ध भयो ।

**दधस्तथोरिति**- द्वित्व भएको झषन्त धाञ् धातुका बश्का स्थानमा भष्भाव होस्, तकार, थकार, दन्त्य सकार र ध्व शब्द पर भएमा पनि ।

**धत्तः**- 'धा+तस्', 'ध+धा+तस्', 'दधा+तस्' आकारको लोप 'दध्+तस्' भएपछि झषन्त धाञ् धातु दध् छ, तकार पर पनि छ र दकारका स्थानमा भष्भाव आदेश हुँदा भ,घ,ढ,ध जम्मै अक्षर पाएकोमा स्थानी दकारका स्थानले अतिशयतुल्य धकार छ र दकारका स्थानमा धकार भयो, 'धध्+तस्', चर्त्व भयो, 'धत्तः' सिद्ध भयो ।

---

८९ "धि च" अथवा "ह्रस्वादङ्गात्"ले सकारको लोप हुन्छ । "इणः षीध्वम्०"ले ढत्व गर्छ । यसका दृष्टिमा यी दुवै सूत्र सिद्ध छन् । अत ढत्व हुन्छ नै ।

दधति । दधासि । धत्थः । धत्थ । धत्ते । दधाते । दधते । धत्से । धद्ध्वे । "घ्वसोरेद्धावभ्यासलोपश्च" । धेहि । अदधात्, अधत्त । दध्यात्, दधीत । धेयात्, धासीष्ट । अधात्, अधित । अधास्यत्, अधास्यत ।

---

**दधति–** 'दधा+अति' यहाँ आकारको लोप भयो, 'दधति' सिद्ध भयो ।

**दधासि–** सिप्मा, तिप्मा जस्तै प्रक्रिया भएर रूप सिद्ध हुन्छ ।

**धत्थः, धत्थ–** यहाँ तस्मा जस्तै भष्भाव, चर्त्व भएर, रूप सिद्ध हुन्छन् ।

उत्तमपुरुषमा दधामि, दध्वः, दध्मः यी रूप हुन्छन् ।

तकार, थकार, दन्त्य सकार, ध्व शब्द जहाँ जहाँ पर हुन्छ, त्यहाँ भष्भाव हुन्छ । अरू प्रक्रिया दा धातुमा जस्तै यहाँ पनि हुन्छ ।

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| **धा.लट्.आ.–** | प्रथमपुरुष | धत्ते | दधाते | दधते |
| | मध्यमपुरुष | धत्से | दधाथे | धद्ध्वे |
| | उत्तमपुरुष | दधे | दध्वहे | दध्महे |
| **धा.लिट्.प.–** | प्रथमपुरुष | दधौ | दधतुः | दधुः |
| | मध्यमपुरुष | दधिथ/दधाथ | दधथुः | दध |
| | उत्तमपुरुष | दधौ | दधिव | दधिव |
| **धा.लिट्.आ.–** | प्रथमपुरुष | दधे | दधाते | दधिरे |
| | मध्यमपुरुष | दधिषे | दधाथे | दधिध्वे |
| | उत्तमपुरुष | दधे | दधिवहे | दधिमहे |

**लुट्–** प्रथमपुरूषमा दुवै पदमा समान रूप र अन्यत्र पूर्ववत् धातासि आदि रूप परस्मैपदमा, धातासे आदि रूप आत्मनेपदमा हुन्छन् ।

**लृट्–** परस्मैपदमा धास्यति आदि र आत्मनेपदमा धास्यते आदि रूप हुन्छन् ।

**घ्वसोरिति–** लोट्मा "घ्वसोरेद्धावभ्यासलोपश्च"ले एत्व र अभ्यासको लोप हुन्छ ।

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| **धा.लोट्.प.–** | प्रथमपुरुष | दधातु/धत्तात् | धत्ताम् | दधतु |
| | मध्यमपुरुष | धेहि/धत्तात् | धत्तम् | धत्त |
| | उत्तमपुरुष | दधानि | दधाव | दधाम |
| **धा.लोट्.आ.–** | प्रथमपुरुष | धत्ताम् | दधाताम् | दधताम् |
| | मध्यमपुरुष | धत्स्व | दधाथाम् | धद्ध्वम् |
| | उत्तमपुरुष | दधै | दधावहै | दधामहै |

अरू लकारमा पनि दा धातुमा जस्तै रूप हुन्छन् । केही भष्भाव हुने स्थल स्मरण गर्नु पर्छ ।

**उपसर्गको योगमा अर्थको भिन्नता–**

सन्दधाति (जोड्छ) निदधाति (राख्छ)
अभिदधाति (भन्दछ) अपिदधाति (ढाक्छ)
परिदधाति (पहिरन्छ) विदधाति (गर्दछ)
पिदधाति (ढाक्छ/अपिका अकारको लोप हुँदा)

---

**णिजिर्** शौचपोषणयोः ॥११॥ **वा.** (इर इत्संज्ञा वाच्या)

**६२६. णिजां त्रयाणां गुणः श्लौ ७।४।७५॥**

णिज्विज्विषामभ्यासस्य गुणः स्यात् श्लौ । नेनेक्ति । नेनिक्तः । नेनिजति । नेनिक्ते । निनेज, निनिजे । नेक्ता ।

---

**णिजिर्**– धातु शुद्ध गर्नु र पोषण दिनु अर्थमा छ ।

(वा.) **इरेति**– इर्को इत्सज्ञा होस् भन्नु ।

णिजिर्का इर्को इत्संज्ञा, लोप भएपछि, "णो नः"ले णकारका स्थानमा नकार हुन्छ । निज् बाँकी रहन्छ । यो निज् धातु उभयपदी हो । इर्को इकार स्वरित हुनाले "स्वरितञितः०"ले क्रियाको फल कर्तामा गएमा आत्मनेपद र नगएमा परस्मैपद हुन्छ । (अनिट् सकर्मक)

**निजामिति**– निज्, विज् र विष् धातुका अभ्यासका स्थानमा गुण होस्, श्लुका विषयमा ।

**नेनेक्ति**– निज् लट्, परस्मैपद तिप्, शप्, श्लु, द्वित्वादि, 'निनिज्+ति' भएपछि, "निजां त्रयाणां०"ले अभ्यासका स्थानमा गुण हुँदा 'नेनिज्+ति', "पुगन्तलघूपधस्य च"ले गुण भयो, "चोः कुः"ले कुत्व भयो, 'नेनेक्ति' सिद्ध भयो ।

**नेनिक्तः**– तस्मा पूर्ववत् 'नेनिज्+तस्' भएपछि ङित्वाद् गुणनिषेध भयो, सकारको रुत्व, विसर्ग, कुत्व, चर्त्व भयो, 'नेनिक्तः' सिद्ध भयो ।

**नेनिजति**– 'नेनिज्+झि', अत्, 'नेनिज्+अति', अभ्यासको गुण, उपधाको गुणनिषेध, 'नेनिजति' सिद्ध भयो ।

**नेनेक्षि**– सिप्मा 'नेनेज्+सि', कुत्व, चर्त्व, षत्व, क्षत्व भयो, 'नेनेक्षि' सिद्ध भयो ।

**नेनिक्थ, नेनिक्थ**– थस् थमा, कुत्व चर्त्व भयो, 'नेनिक्थः', 'नेनिक्थ' यी दुई रूप सिद्ध भए ।

**नेनेज्मि, नेनिज्वः, नेनिज्मः**– मिप्, वस्, मस्मा झल् पर नहुनाले कुत्व भएन ।

| | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| **निज् लट् आ.-** | | | | |
| | प्रथमपुरुष | नेनिक्ते | नेनिजाते | नेनिजते |
| | मध्यमपुरुष | नेनिक्षे | नेनिजाथे | नेनिग्ध्वे |
| | उत्तमपुरुष | नेनिजे | नेनिज्वहे | नेनिज्महे |
| **निज् लिट् प.-** | प्रथमपुरुष | निनेज | निनिजतुः | निनिजुः |
| | मध्यमपुरुष | निनेजिथ | निनिजथुः | निनिज |
| | उत्तमपुरुष | निनेज | निनिजिव | निनिजिम |

यो धातु अजन्त र अकारवान् नहुनाले थल् र व म मा "अचस्तास्वत्०" "उपदेशेऽत्वतः" यी दुवै सूत्रको प्रसङ्ग छैन, अतः "ऋतो भारद्वाजस्य"को पनि प्रसङ्ग छैन । क्रादिनियमले नित्य इट् हुन्छ, आत्मनेपदमा पनि से, ध्वे, वहे, महेमा नित्य नै इट् हुन्छ ।

| **निज् लिट् आ.-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | निनिजे | निनिजाते | निनिजिरे |
| | मध्यमपुरुष | निनिजिषे | निनिजाथे | निनिजिध्वे |
| | उत्तमपुरुष | निनिजे | निनिजिवहे | निनिजिमहे |

**नेक्ता**– लुट् लकारमा निज् धातु अनुदात्त हुनाले "एकाच०"ले तासि प्रत्ययको इट् आगमको

---

नेक्ष्यति, नेक्ष्यते । नेनेक्तु । नेनिग्धि ॥

**६२७. नाभ्यस्तस्याचि पिति सार्वधातुके ७।३।८७॥**

लघूपधगुणो न स्यात् । नेनिजानि । नेनिक्ताम् । अनेनेक् । अनेनिक्ताम् । अनेनिजुः । अनेनिजम् । अनेनिक्त । नेनिज्यात् । नेनिजीत ।

---

निषेध हुन्छ, जकारको "चोः कुः"ले कुत्व हुन्छ । परस्मैपदमा नेक्ता, नेक्तारौ, नेक्तारः । नेक्तासि, आदि रूप हुन्छन् । आत्मनेपदमा पनि नेक्ता, नेक्तारौ, नेक्तारः । नेक्तासे आदि रूप हुन्छन् ।

**नेक्ष्यति**– निज् लृट्, तिप्, स्य, 'निज्+स्यति' इट्निषेध गुण, कुत्व, चर्त्व, षत्व, क्षत्व भयो, 'नेक्ष्यति' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध हुन्छन् । आत्मनेपदमा पनि त्यही प्रक्रिया भएर नेक्ष्यते आदि रूप हुन्छन् ।

**लोट्** परस्मैपद प्रथमपुरुषमा– नेनेक्तु/नेनिक्तात्, नेनिक्ताम्, नेनिजतु यी रूप हुन्छन् । मध्यमपुरुष सिप्मा हि आदेश भएपछि "हुझल्भ्यो हेर्धिः"ले हिका स्थानमा धिआदेश हुन्छ । र, नेनिग्धि हुन्छ । तातङ् भएको पक्षमा नेनिक्तात् हुन्छ । थस्, थमा नेनिक्तम्, नेनिक्त यी रूप हुन्छन् । उत्तमपुरुषमा विशेष कार्य छ ।

**नाभ्यस्तेति**– अभ्यस्तसंज्ञक धातुका स्थानमा अच्, पित् सार्वधातुकसंज्ञक प्रत्यय पर भएमा लघूपध लक्षण गुण नहोस् ।

**नेनिजानि, नेनिजाव, नेनिजाम**– मिप्मा 'नेनिज्+आनि' यहाँ "पुगन्तलघूपधस्य च"ले गुण पाएको थियो, आट्मा पित्व हुनाले "नाभ्यस्तस्याचि पिति०"ले निषेध भयो, 'नेनिजानि' सिद्ध भयो । वस्, मस्मा पनि आट्मा पित्व हुनाले उक्त सूत्रले गुणनिषेध भयो, 'नेनिजाव', 'नेनिजाम' सिद्ध भयो ।

| **निज् लोट् आ.–** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | नेनिक्ताम् | नेनिजाताम् | नेनिजताम् |
| | मध्यमपुरुष | नेनिक्ष्व | नेनिजाथाम् | नेनिग्ध्वम् |
| | उत्तमपुरुष | नेनिजै | नेनिजावहै | नेनिजामहै |
| **निज् लङ् प–** | प्रथमपुरुष | अनेनेक् | अनेनिक्ताम् | अनेनिजुः |
| | मध्यमपुरुष | अनेनेक् | अनेनिक्तम् | अनेनिक्त |
| | उत्तमपुरुष | अनेनिजम् | अनेनिज्व | अनेनिज्म |

**निज्** मिप्मा अम् अजादिपित् हुनाले "नाभ्यस्तस्याचि पिति०"ले गुणनिषेध हुन्छ ।

| **निज् लङ् आ–** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अनेनिक्त | अनेनिजाताम् | अनेनिजत |
| | मध्यमपुरुष | अनेनिक्थाः | अनेनिजाथाम् | अनेनिग्ध्वम् |
| | उत्तमपुरुष | अनेनिजि | अनेनिज्वहि | अनेनिज्महि |
| **निज् विलि प–** | प्रथमपुरुष | नेनिज्यात् | नेनिज्याताम् | नेनिज्युः |
| | मध्यमपुरुष | नेनिज्याः | नेनिज्यातम् | नेनिज्यात |
| | उत्तमपुरुष | नेनिज्याम् | नेनिज्याव | नेनिज्याम |
| **निज् विलि आ.–** | प्रथमपुरुष | नेनिजीत | नेनिजीयाताम् | नेनिजीरन् |
| | मध्यमपुरुष | नेनिजीथाः | नेनिजीयाथाम् | नेनिजीध्वम् |
| | उत्तमपुरुष | नेनिजीय | नेनिजीवहि | नेनिजीमहि |

निज्यात्, निक्षीष्ट ॥

**६२८. इरितो वा ३।१५७॥**

इरितो धातोश्च्लेरङ् वा परस्मैपदेषु । अनिजत्, अनैक्षीत्, अनिक्त । अनेक्ष्यत्, अनेक्ष्यत ॥

**इति जुहोत्यादयः ॥३॥**

---

**इरित इति**– इर्‌को इत्संज्ञा हुने धातुदेखि विधान गरिएका च्लिका स्थानमा अङ् आदेश विकल्पले होस्, परस्मैपद पर भएमा ।

**अनिजत्**– निज् लुङ्, अट्, ति, च्लि प्रत्यय, 'अनिज्+च्लि+ति' यहाँ "इरितो वा"ले च्लिका स्थानमा वैकल्पिक अङ् भयो, 'अनिज्+अ+ति' अङ्मा ङित्व हुनाले लघूपध गुणनिषेध भयो, तिका इकारको इतश्चले लोप भयो, 'अनिजत्' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि जान्नू ।

**निज् लुङ् परस्मैपद (अङ् भएको पक्षमा)**–

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अनिजत् | अनिजताम् | अनिजन् |
| मध्यमपुरुष | अनिजः | अनिजतम् | अनिजत |
| उत्तमपुरुष | अनिजम् | अनिजाव | अनिजाम |

**अनैक्षीत्**– अङ् नभएको पक्षमा 'अनिज्+च्लि+ति' यस्तै छ यहाँ च्लिका स्थानमा सिच् भयो, 'अनिज्+स्+ति', सिच्‌को इट् पाएमा "एकाच०"ले निषेध भयो, "वदव्रजहलन्तस्याचः"ले वृद्धि भयो, 'अनैज्+स्+ति' तिका इकारको "इतश्च"ले लोप "अस्तिसिचो"ले ईट् भयो, 'अनैज्+स्+ईत्' जकारको कुत्व, चर्त्व, षत्व, क्षत्व भयो, 'अनैक्षीत्' सिद्ध भयो ।

**अनैष्टाम्**– तस्मा, 'अनिज्+च्लि+ताम्' यहाँ सिच्आदेश 'अनिज्+स्+ताम्', वृद्धि, कुत्व, चर्त्व, "झलो झलि"ले सकारको लोप भयो, 'अनैष्टाम्' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध हुन्छन् ।

**निज् लुङ् परस्मैपद (सिच् भएको पक्षमा)**–

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अनैक्षीत् | अनैक्ताम् | अनैक्षुः |
| मध्यमपुरुष | अनैक्षीः | अनैक्तम् | अनैक्त |
| उत्तमपुरुष | अनैक्षम् | अनैक्ष्व | अनैक्ष्म |

आत्मनेपदमा "लिङ् सिचावात्मनेपदेषु"ले सिच् कित् हुनाले गुणनिषेध हुन्छ ।

**निज् लुङ् आ**–

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अनिक्त | अनिक्षाताम् | अनिक्षत |
| मध्यमपुरुष | अनिक्थाः | अनिक्षाथाम् | अनिग्ध्वम् |
| उत्तमपुरुष | अनिक्षि | अनिक्ष्वहि | अनिक्ष्महि |

लृङ् परस्मैपदमा अनेक्ष्यत् आदि र आत्मनेपदमा अनेक्ष्यत आदि रूप हुन्छन् ।

**जुहोत्यादि गण समाप्त भयो ।**

---------------

## अथ दिवादयः

**दिवु** क्रीडाविजिगीषाव्यवहारद्युतिस्तुतिमोदमदस्वप्नकान्तिगतिषु ॥१॥

६२९. **दिवादिभ्यः श्यन् ३।१।६९॥**

शपोऽपवादः । हलि चेति दीर्घः । दीव्यति । दिदेव । देविता । देविष्यति ।

---

**अब दिवादिगण शुरू हुन्छ**

**दिवु** धातु खेल्नु, विजयको इच्छा गर्नु, व्यवहार गर्नु, प्रकाश हुनु, स्तुति गर्नु, खुशी हुनु, मत्त हुनु, सुत्नु, इच्छा गर्नु, हिंड्नु अर्थमा छ । उकारको इत्संज्ञा लोप हुन्छ उकार उदात्त हो अतः "शेषात्कर्तरि०"ले परस्मैपद हुन्छ । सेट् अर्थानुसार सकर्मक अकर्मक दुवै)

**दिवादिभ्य इति**–दिवादि धातुदेखि श्यन् प्रत्यय होस् कर्ता अर्थमा विधान गरिएको सार्वधातुकसंज्ञक प्रत्यय पर भएमा । यो श्यन् प्रत्यय शप् प्रत्ययको अपवाद हो । "हलि च"ले दीर्घ हुन्छ ।

**दीव्यति**– दिव् धातुदेखि लट्, तिप्, 'दिव्+ति' यहाँ "कर्तरि शप्"ले शप् पायो, बाधेर "दिवादिभ्यः श्यन्"ले श्यन् प्रत्यय भयो, शकारको "लशक्वतद्धिते"ले शकारको "हलन्त्यम्"ले नकारको इत्संज्ञा लोप भयो, 'दिव्+य+ति' यहाँ वान्तधातु हुनाले उपधा-दिव्का इकारका स्थानमा "हलि च"ले दीर्घ भयो, 'दीव्यति' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध गर्नू ।

| दिव् लट्- | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | दीव्यति | दीव्यतः | दीव्यन्ति |
| | मध्यमपुरुष | दीव्यसि | दीव्यथः | दीव्यथ |
| | उत्तमपुरुष | दीव्यामि | दीव्यावः | दीव्यामः |
| दिव् लिट्- | प्रथमपुरुष | दिदेव | दिदिवतुः | दिदिवुः |
| | मध्यमपुरुष | दिदेविथ | दिदिवथुः | दिदिव |
| | उत्तमपुरुष | दिदेव | दिदिविव | दिदिविम |

**देविता**– दिव् लुट्, तिप्, डा, तासि, इट् आगम 'दिव्+इतास्+आ', लघूपधगुण, 'देवितास्+आ' टिलोप, 'देविता' सिद्ध भयो ।

| दिव् लुट्- **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | देविता | देवतारौ | देवितारः |
| मध्यपुरुष | देवितासि | देवितास्थः | देवितास्थ |
| उत्तमपुरुष | देवितास्मि | देवितास्वः | देवितास्मः |

**लृट्मा**– देविष्यति, देविष्यतः देविष्यन्ति आदि रूप हुन्छन् ।

लोट्मा लङ्मा र विधिर्लिङ्मा "हलि च"ले उपधाको दीर्घ हुन्छ । अरू प्रक्रिया भ्वादिमा जस्तै हुन्छ ।

दीव्यतु । अदीव्यत् । दीव्येत् । दिव्यात् । अदेवीत् । अदेविष्यत् ॥ एवं **षिवु** तन्तुसन्ताने ॥२॥
**नृती** गात्रविक्षेपे ॥३॥ नृत्यति ननर्त ।

---

| दिव् लोट्- | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | दीव्यतु/दीव्यतात् | दीव्यताम् | दीव्यन्तु |
| | मध्यमपुरुष | दीव्य/दीव्यतात् | दीव्यतम् | दीव्यत |
| | उत्तमपुरुष | दीव्यानि | दीव्याव | दीव्याम |
| दिव् लङ्- | प्रथमपुरुष | अदीव्यत् | अदीव्यताम् | अदीव्यन् |
| | मध्यमपुरुष | अदीव्यः | अदीव्यतम् | अदीव्यत |
| | **उत्तमपुरुष** | **अदीव्यम्** | **अदीव्याव** | **अदीव्याम** |

**विधिलिङ्मा दीव्येत्**, दीव्येताम्, दीव्येयुः । दीव्येः दीव्येतम् इत्यादि रूप हुन्छन् । **आशीर्लिङमा पनि** "हलि च"ले दीर्घ हुन्छ, अरू प्रक्रिया भ्वादिमा जस्तै हुन्छ ।

| दिव् वि.लि.- | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | दीव्यात् | दीव्यास्ताम् | दीव्यासुः |
| | मध्यमपुरुष | दीव्याः | दीव्यास्तम् | दीव्यास्त |
| | उत्तमपुरुष | दीव्यासम् | दीव्यास्व | दीव्यास्म |

**लुङ्मा-** "वदव्रज०"ले पाएको वृद्धि "नेटि०"ले निषेध हुन्छ "पुगन्त०"ले उपधागुण हुन्छ । षिध धातुमा जस्तै रूप बन्छन् ।

| दिव् लुङ्- | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अदेवीत् | अदेविष्टाम् | अदेविषुः |
| | मध्यमपुरुष | अदेवीः | अदेविष्टम् | अदेविष्ट |
| | उत्तमपुरुष | अदेविषम् | अदेविष्व | अदेविष्म |

**लृट्मा-** अदेविष्यत्, अदेविष्यताम् आदि रूप हुन्छन् । यस्तै षिवु धातु पनि छ ।

**षिवु धातु-** धागोको तान लाउनु (सिउनु) अर्थमा छ । (सेट् सकर्मक)

यसका आदिमा रहेको मूर्धन्य षकारको "धात्वादे षः सः"ले दन्त्य सकार हुन्छ । उकारको इत्संज्ञा हुन्छ । (परस्मैपदी सेट् सकर्मक धातु ) लट् आदि लकारमा- सीव्यति, सिषेव, सेविता, सेविष्यति इत्यांदि दिवु धातुका जस्तै रूप बन्दछन् ।

**नृती** धातु गात्रविक्षेप अर्थात् नाच्नु अर्थमा छ । दीर्घ ईकारको इत्संज्ञा लोप हुन्छ । यो धातु परस्मैपदी हो । (सेट् अकर्मक )

**नृत्यति-** नृत् लट्, तिप्, शप्लाई बाधेर श्यन्, अपित् सार्वधातुक हुनाले ङित्वद्भाव, "पुगन्तलघूपधस्य च"ले पाएको गुण, ङित्वात् निषेध भयो, 'नृत्यति' सिद्ध भयो । बाँकी रूप- नृत्यतः, नृत्यन्ति । नृत्यसि, नृत्यथः, नृत्यथ । नृत्यामि, नृत्यावः, नृत्यामः हुन्छन् ।

**ननर्त-** नृत् लिट्, तिप्, णल, 'नृत्+अ', 'नृत्+नृत्+अ', 'नरत्+नृत्+अ', 'ननृत्+अ' गुण भयो, 'ननर्त' सिद्ध भयो ।

अतुस्, उस्, अथुस्, अ, व, ममा कित्वात्, गुणनिषेध, थल्मा र व, म,मा नित्य इट् हुन्छ ।

नर्तिता ॥

**६३०. सेऽसिचि कृतचृतच्छृदतृदनृतः ७।२।५७॥**

एभ्यः परस्य सिज्भिन्नस्य सादेरार्धधातुकस्येड्वा । नर्तिष्यति, नर्त्स्यति । नृत्यतु । अनृत्यत् । नृत्येत् । नृत्यात् । अनर्तीत् । अनर्तिष्यत्, अनर्त्स्यत् ॥

---

नृत् लिट्-

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | ननर्त | ननृततुः | ननृतुः |
| मध्यमपुरुष | ननर्तिथ | ननृतथुः | ननृत |
| उत्तमपुरुष | ननर्त | ननृतिव | ननृतिम |

**नर्तिता**- लुट्मा तासि प्रत्ययको "आर्धधातुकस्येड्०" ले नित्य इट् आगम हुन्छ, नर्तिता नर्तितारौ नर्तितारः आदि रूप हुन्छन् ।

**सेऽसिचीति**- कृत्, चृत्, छृत्, तृद्, नृत् धातुदेखि पररहेको सिच्भिन्न सकारादि आर्धधातुक प्रत्ययको इट् आगम विकल्पले होस् ।

**नर्तिष्यति/नर्त्स्यति**- 'नृत्+स्य+ति', "आर्धधातुकस्येड्०"ले नित्य इट् आगम पायो, त्यसलाई बाधेर "सेऽसिचि"ले वैकल्पिक इट् आगम भयो, गुण, षत्व भयो, 'नर्तिष्यति' सिद्ध भयो । इट् नभएका पक्षमा पनि गुण भयो, 'नर्त्स्यति' सिद्ध भयो । यसरी यी दुई रूप सिद्ध भए ।

**नृत लृट् (इट् आगम भएको पक्षमा)-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | नर्तिष्यति | नर्तिष्यतः | नर्तिष्यन्ति |
| मध्यमपुरुष | नर्तिष्यसि | नर्तिष्यथः | नर्तिष्यथ |
| उत्तमपुरुष | नर्तिष्यामि | नर्तिष्यावः | नर्तिष्यामः |

**नृत लृट् (इट् आगम नभएको पक्षमा)-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | नर्स्यति | नर्त्स्यतः | नर्त्स्यन्ति |
| मध्यमपुरुष | नर्त्स्यसि | नर्त्स्यथः | नर्त्स्यथ |
| उत्तमपुरुष | नर्त्स्यामि | नर्त्स्यावः | नर्त्स्यामः |

लोट्, लङ्, विधिलिङ्मा श्यन् प्रत्यय भएपछि भ्वादिमा जस्तै प्रक्रिया हुन्छ । लोट् लङ् विधिलिङ्का तिप्का रूप दिग्दर्शनको निमित्त दिइन्छ- नृत्यतु/नृत्यतात् । अनृत्यत् । नृत्येत् ।

आशीर्लिङ् यासुट्मा ङित्व हुनाले लघूपध गुण हुँदैन । नृत्यात्, नृत्यास्ताम्, नृत्यासुः आदि रूप हुन्छन् ।

**लुङ्मा**- "वदव्रज०"ले पाएको हलन्तलक्षण वृद्धिको "नेटि"ले निषेध हुन्छ ।

नृत् लुङ्-

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अनर्तीत् | अनर्तिष्टाम् | अनर्तिषुः |
| मध्यमपुरुष | अनर्तीः | अनर्तिष्टम् | अनर्तिष्ट |
| उत्तमपुरुष | अनर्तिषम् | अनर्तिष्व | अनर्तिष्म |

**लृङ्मा**- "सेऽसिचि"ले वैकल्पिक इट् आगम हुन्छ । अनर्तिष्यत्, अनर्त्स्यत् आदि रूप हुन्छन् ।

**त्रसी** उद्वेगे ॥४॥ वा भ्राशेति श्यन्वा । त्रस्यति, त्रसति । तत्रास ॥

**६३१. वा जॄभ्रमुत्रसाम् ६।४।१२४॥**

एषां किति लिटि सेटि थलि च एत्वाभ्यासलोपौ वा । त्रेसतुः, तत्रसतुः । त्रेसिथ, तत्रसिथ । त्रसिता ॥ **शो** तनूकरणे ॥५॥

**६३२. ओतः श्यनि ७।३।७१॥**

लोपः स्यात् । श्यति । श्यतः । श्यन्ति । शशौ ।

---

**त्रसी**धातु उद्वेग अर्थात् डराउनु अर्थमा छ । ईकारको इत्संज्ञा लोप हुन्छ । यो धातु परस्मैपदी धातु हो । "व्राभ्राश०"ले वैकल्पिक श्यन् हुन्छ ।(सेट् अकर्मक )

**त्रस्यति/त्रसति**– त्रस् लट्, तिप्, 'त्रस्+ति', यहाँ "दिवादिभ्यः श्यन्"लाई बाधेर "वा भ्राशभ्लाश०"ले वैकल्पिक श्यन् प्रत्यय भयो, 'त्रस्यति' सिद्ध भयो । श्यन् नभएको पक्षमा शप् भयो, 'त्रसति' सिद्ध भयो ।

**तत्रास**– त्रस् लिट्, तिप्, णल्, 'त्रस्+अ', द्वित्वादि, 'तत्रस्+अ', वृद्धि भयो, 'तत्रास' सिद्ध भयो ।

(वा.) **जॄभ्रमेति**– जॄ, भ्रम् र त्रस् धातुको एत्व र अभ्यासको लोप विकल्पले होस्, कित्, लिट र सेट् थल् पर भएमा ।

**त्रेसतुः/तत्रसतुः**– त्रस् लिट्, तिप्, णल्, द्वित्व, अभ्यासकार्य 'तत्रस्+अतुस्' यहाँ कित्, लिट् पर छ र "वा जॄभ्रमुत्रसाम्"ले एत्व र अभ्यासलोप विकल्पले भयो, 'त्रेसतुः' सिद्ध भयो । एत्व अभ्यासलोप नभएका पक्षमा 'तत्रसतुः' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध गर्नू । सेट् थल्मा पनि एत्व र अभ्यासलोप हुन्छ ।

| **त्रस् लिट्**– | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | तत्रास | त्रेसतुः/तत्रसतुः | त्रेसुः/तत्रसुः |
| | मध्यमपुरुष | त्रेसिथ/तत्रसिथ | त्रेसथुः/तत्रसथुः | त्रेस/तत्रस |
| | उत्तमपुरुष | तत्रास/तत्रस | त्रेसिव/तत्रसिव | त्रेसिम/तत्रसिम |

**लुट्मा**– त्रसिता आदि, **लृट्मा**– त्रसिष्यति आदि, **लोट्मा**– त्रस्यतु/त्रसतु आदि, **लङ्मा**– अत्रस्यत्/अत्रसत् आदि, **विधिलिङ्मा**– त्रस्येत्/त्रसेत् आदि, **आशीर्लिङ्मा**– त्रस्यात् आदि रूप हुन्छन् ।

**लुङ्मा** "अतो हलादेर्लघोः"ले वैकल्पिक वृद्धि हुन्छ । अत्रासीत्/अत्रसीत् आदिरूप हुन्छन् ।

**लृङ्मा**– अत्रसिष्यत् आदि रूप हुन्छन् ।

**शो** धातु तिखार्नु अर्थमा छ । यो धातु परस्मैपदी हो । (अनिट् सकर्मक)

**ओत इति**– ओकारको लोप होस्, श्यन् प्रत्यय परभएमा ।

**श्यति**– शो धातुदेखि लट्, तिप्, शप्लाई बाधेर श्यन्, 'शो+यति' भयो, शोका ओकारको लोप भयो, 'श्यति' सिद्ध भयो । यस्तै प्रकारले सबै विभक्तिमा ओकारको लोप हुन्छ ।

| **शो लिट्**– | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | श्यति | श्यतः | श्यन्ति |
| | मध्यमपुरुष | श्यसि | श्यथः | श्यथ |
| | उत्तमपुरुष | श्यामि | श्यावः | श्यामः |

यस्तै प्रकारले लोट् लङ् र विधिलिङ्मा श्यन् प्रत्यय पर हुने हुनाले शोका ओकारको लोप हुन्छ ।

**शशौ**– शोधातुदेखि लिट्, "आदेच उपदेशेऽशिति"ले आत्व, 'शा+ल्' भयो, तिप्, णल्, 'शा+अ', द्वित्व, अभ्यासकार्य, 'शशा+अ', "आत औ णलः"ले णल्का स्थानमा औकार आदेश वृद्धि

शशतुः । शाता । शास्यति ॥

**६३३. विभाषा घ्राधेट्शाच्छासः २।४।७८॥**

एभ्यः सिचो लुग्वा स्यात्परस्मैपदे परे । अशात् । अशाताम् । अशुः । इट्सकौ । अशासीत् । अशासिष्टाम् ॥

---

भयो, 'शशौ' सिद्ध भयो ।

**शशतुः**– पूर्ववत् 'शा+अतुस्' द्वित्वादि भएपछि, "आतो लोप इटि च"ले आकारको लोप भयो, 'शशतुः' सिद्ध भयो । यस्तै प्रकारले अरू पनि कित् विभक्ति पर भएमा र इट् पर भएमा पनि आकारको लोप हुन्छ । थल्मा भारद्वाज नियमले वैकल्पिक इट् आगम हुन्छ । इट् आगम भएमा आकारको लोप र नभएमा यथावत् रहन्छ । व, म,मा क्रादिनियमले नित्य इट् हुन्छ, आकारको लोप हुन्छ । उत्तमपुरुष णल्मा "आत औ णलः"ले औकार भएपछि वृद्धि हुन्छ ।

**शो लिट्**–

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | शशौ | शशतुः | शशुः |
| मध्यमपुरुष | शशिथ/शशाथ | शशथुः | शश |
| उत्तमपुरुष | शशौ | शशिव | शशिम |

यस्तै प्रकारले अरू आर्धधातुक लकार-लुट्, लृट्, लिङ् र लृङ्को विवक्षामा पनि शोधातु "आदेच०"ले आत्व भएर आकारान्त शाधातु बन्दछ र आकारान्त धातुका जस्तै रूप हुन्छन् । "आदेच उपदेशेऽशिति"मा अशितिको अर्थ शित् भिन्न प्रत्ययको विषयमा यस्तो गरेर लकार ल्याउनु भन्दा पहिले नै आत्व गरे पनि हुन्छ । लुट्देखि आशीर्लिङ्सम्मका प्रत्येक लकारका प्रथमपुरुष एकवचनका रूप दिग्दर्शनको लागि तल दिइन्छ । शाता । शास्यति । श्यतु । अश्यत् । श्येत् । शायात् । लुङ्मा विशेष कार्य छ ।

**विभाषेति**– घ्रा धातु, धेट् धातु, शा धातु, छा धातु, सा धातुदेखि पर रहेका सिच्को लुक् विकल्पले होस्, परस्मैपद पर भएमा ।

**अशात्/अशासीत्**– शो लुङ्, अट्, तिप्, च्लि, सिच्, आत्व, 'अशा+स्+ति' तिका इकारको लोप, 'अशास्+त्' यहाँ "विभाषा घ्रोधेट्०"ले सिच्को लुक् भयो, 'अशात्' सिद्ध भयो । लुक नभएका पक्षमा "यमरमनमातां०"ले सक् आगम र इट् आगम भयो । "अस्तिसिचो०"ले त्को ईट् आगम भयो, सिच्को लोप भयो, दीर्घ भयो, 'आशासीत्' सिद्ध भयो । यसरी दुई रूप भए यसैगरी सबै विभक्तिमा दुई दुई रूप हुन्छन् ।

**शो लङ्– (सिच्को लुक् भएको पक्षमा)**–

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अशात् | अशाताम् | अशुः |
| मध्यमपुरुष | अशाः | अशातम् | अशात |
| उत्तमपुरुष | अशाम् | अशाव | अशाम |

**शो लङ्– (सिच्को लुक् नभएको पक्षमा)**–

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अशासीत् | अशासिष्टाम् | अशासिषुः |
| मध्यमपुरुष | अशासीः | अशासिष्टम् | अशासिष्ट |
| उत्तमपुरुष | अशासिषम् | अशासिष्व | अशासिष्म |

---

**छो** छेदने ॥६॥ छ्यति ॥ **षो**ऽन्तकर्मणि ॥७॥ स्यति । ससौ ॥ **दो**ऽवखण्डने ॥८॥ द्यति । ददौ । देयात् । अदात् । **व्यध** ताडने ॥९॥

**६३४. ग्रहिज्यावयिव्यधिवष्टिविचतिवृश्चतिपृच्छतिभृज्जतीनां ङिति च** ६।१।१६॥

एषां सम्प्रसारणं स्यात्किति ङिति च । विध्यति । विव्याध ।

---

**लृङ्मा** अशास्यत् आदि रूप हुन्छन् ।

**छो**धातु काट्नु अर्थमा छ । यो धातु परस्मैपदी अनिट् सकर्मक हो ।

**छ्यति**– छो लट्, तिप्, श्यन्, 'छो+यति', छोका ओकारको "ओतः श्यनि"ले लोप भयो, 'छ्यति' सिद्ध भयो । यस्तै प्रकारले लट्लकारका अरू विभक्ति वचनमा पनि शो धातुमा जस्तै प्रक्रियाद्वारा रूप बन्दछन् ।

**षो** धातु नाश हुनु र नाश गर्नु अर्थमा छ । यो धातु परस्मैपदी अनिट् हो, नाश हुनु अर्थमा अकर्मक, नाश गर्नु अर्थमा सकर्मक छ । "धात्वादेः षः सः"ले षकारको स्थानमा षकार हुन्छ । स्यति । ससौ । साता । सास्यति आदि शो धातुका जस्तै रूप हुन्छन् ।

**दो**धातु टुक्रा गर्नु अर्थमा छ । परस्मैपदी हो । (अनिट् सकर्मक )

**लट्मा**– द्यति, द्यतः, द्यन्ति आदि रूप हुन्छन् ।

**अरू लकारका पनि– लिट्मा**– ददौ । **लुट्मा**– दाता । **लृट्मा**– दास्यति । **लोट्मा**– द्यतु । **लङ्मा**– अद्यत् । **विधिलिङ्मा**– द्येत् आदि शो धातुका जस्तै रूप हुन्छन् ।

दारूप हुने धातु हुनाले यो घुसंज्ञक हुन्छ । अतः **आशीर्लिङ्मा** एत्व भएर देयात् इत्यादि रूप दा धातुका जस्तै हुन्छन् । **लुङ्मा**– "गातिस्था"ले सिच्को लुक् हुन्छ र अदात्, अदाताम्, इत्यादि दा धातुका जस्तै रूप हुन्छन् । **लृट्मा**– अदास्यत् आदि रूप हुन्छन् ।

**व्यध** धातु पिट्नु अर्थमा छ । धका अकारको इत्संज्ञा र लोप हुन्छ । यो धातु परस्मैपदी हो । (अनिट् सकर्मक )

**ग्रहिज्येति**– ग्रह्, ज्या, वेञ्, व्यध्, वश्, व्यच्, व्रश्च, प्रच्छ, भ्रस्ज् यी धातुका स्थानमा संप्रसारण होस्, कित् र ङित् प्रत्यय परभएमा ।

**विध्यति**– व्यध् धातुदेखि लट्, तिप्, श्यन् प्रत्यय, 'व्यध्+य+ति' भएपछि यलाई "सार्वधातुकमपित्"ले ङिद्वद्भाव भयो, "ग्रहिज्यावयिव्यधि०"ले ङित् प्रत्यय परहुनाले व्यध् धातुका स्थानमा सम्प्रसारण गर्दा यण्का स्थानमा प्रयोग गरिने इक् संप्रसारण संज्ञक भएकोले व्यध् यहाँ व र य दुई यण् छन् । कुनका स्थानमा पहिले संप्रसारण गर्ने त ? भन्दा "न संप्रसारणे०" यो सूत्र ज्ञापक भएकोले पहिले परको यण् यकारका स्थानमा संप्रसारण इकार भयो, 'वि+अध्+य+ति', "सम्प्रसारणाच्च"ले पूर्वरूप भयो, 'विध्+यति' भयो । वकारका स्थानमा पुनः "ग्रहिज्या०"ले संप्रसारण पाएकोमा "न संप्रसारणे०"ले निषेध भयो, 'विध्यति' सिद्ध भयो । यस्तै प्रकारले विध्यतः, विध्यन्ति आदि रूप सिद्ध हुन्छन् ।

| लङ्– | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | विध्यति | विध्यतः | विध्यन्ति |
| | मध्यमपुरुष | विध्यसि | विध्यथः | विध्यथ |
| | उत्तमपुरुष | विध्यामि | विध्यावः | विध्यामः |

**विव्याध**– व्यध् लिट्, तिप्, णल्, 'व्यध्+अ' द्वित्व, 'व्यध्+व्यध्+अ', "सम्प्रसारणं तदाश्रयं च कार्यं बलवत्" यो परिभाषा लाएर पहिले "लिटचभ्यासस्योभयेषाम्"ले अभ्यासको सम्प्रसारण

विविधतुः । विविधुः । विव्यधिथ, विव्यद्ध । व्यद्धा । व्यत्स्यति । विध्येत् । विध्यात् ।

---

गर्दा "न संप्रसारणे संप्रसारणम्" यो सूत्र ज्ञापक हुनाले यकारको पहिले सम्प्रसारण, पूर्वरूप 'विध्+व्यध्+अ', यहाँ पुनः वकारको संप्रसारण पाएमा "न सम्प्रसारणे०"ले निषेध, हलादिशेष 'विव्यध्+अ', "अत उपधायाः"ले वृद्धि भयो, 'विव्याध' सिद्ध भयो ।

**विविधतुः**– व्यध् लिट्, तस्, अतुस्, 'व्यध्+अतुस्' भएपछि "ग्रहिज्यावयि०"ले द्वित्व हुनुभन्दा पहिले पूर्ववत् यकारको संप्रसारण, पूर्वरूप, वकारको संप्रसारणनिषेध, द्वित्व, 'विध्+विध्+अतुस्' हलादिशेष, 'विविध्+अतुस्' कित्वात् लघूपधगुणको निषेध भयो, 'विविधतुः' सिद्ध भयो ।

यहाँ णल्मा द्वित्व भएपछि संप्रसारण र अतुस्मा सम्प्रसारण गरेपछि द्वित्व किन ? भन्ने शङ्काको ठाउँ छैन । किनभने णल्मा "लिटचभ्यासस्योभयेषाम्"ले संप्रसारण हुने हो । त्यसले अभ्यासको संप्रसारण गर्न पहिले द्वित्व गर्नै पर्‍यो । द्वित्व गरेपछि हलादिशेषलाई बाधेर संप्रसारण भयो । अतुस्मा "ग्रहिज्या०"ले अभ्यास हुनु आवश्यक छैन । किति ङिति भनेको हुनाले कित् पर छ र सम्प्रसारण र सम्प्रसारणलाई आश्रय मानेर हुने कार्य सबैभन्दा बलवान् हुने हुनाले, द्वित्वलाई बाधेर पहिले संप्रसारण र पछि द्वित्व हुने भयो, यो सुस्पष्टै छ । णल्मा "हलादिशेषः"लाई "लिटचभ्यासस्य०"ले बाध्यो, अतुस्मा द्वित्वलाई "ग्राहिज्या०"ले बाध्यो यो कुरामा शङ्काको लेश मात्र पनि छैन, निर्मल छ । णल्मा हलादिशेषलाई नबाध्ने हो भने उव्याध यस्तो अनिष्ट रूप हुन्छ । अतः हलादिशेषलाई बाधेर संप्रसारण गर्नुपर्छ । यस्तै प्रकारले उस्मा पनि 'विविधुः' सिद्ध हुन्छ ।

**विव्यधिथ/विव्यद्ध**- थल्मा 'व्यध्+थ' तासि प्रत्ययमा नित्य अनिट् अकारवान् धातु हुनाले वैकल्पिक इट् आगम भयो, 'व्यध्+इथ' यहाँ द्वित्व भयो, हलादिशेषलाई बाधेर संप्रसारण पूर्वरूप भयो, पूर्ववत् वकारको संप्रसारणनिषेध, हलादिशेष भयो, 'विव्यधिथ' सिद्ध भयो । इट् नभएका पक्षमा पनि द्वित्व संप्रसारण हलादिशेष भएर 'विव्यध्+थ' भएपछि, "झषस्तथोः०"ले थकारको स्थानमा धकार पूर्वधकारका स्थानमा जश्त्व भएर दकार भयो, 'विव्यद्ध' सिद्ध भयो ।

**विविधथुः, विविध**– अथुस् र अमा पनि अतुस् उस्मा जस्तै प्रक्रिया हुन्छ र रूप सिद्ध हुन्छन् । व, ममा पनि त्यही प्रक्रिया हुन्छ व, मको क्रादिनियमले नित्य इट् हुन्छ । उत्तमपुरूष णल्मा भने णित् पक्षमा वृद्धि, नभएको पक्षमा यथावत् वर्णमेलन हुन्छ । र, विव्याध- विव्यध, विविधिव, विविधिम यी रूप सिद्ध हुन्छन् ।

**व्यद्धा**- व्यध् लुट्, तिप्, तासि प्रत्यय, डा आदेश, टिलोप, 'व्यध्+ता' भएपछि "झषस्तथोः०"ले धत्व, जश्त्व भयो, 'व्यद्धा' सिद्ध भयो । यस्तै प्रकारले व्यद्धारौ, व्यद्धारः आदि रूप सिद्ध हुन्छन् ।

**लृट् व्यत्स्यति**- व्यध्, लृट्, तिप्, स्यप्रत्यय 'व्यध्+स्यति', "खरि च"ले चर्त्व भयो, 'व्यत्स्यति' सिद्ध भयो । यस्तै प्रकारले व्यत्स्यतः आदि रूप पनि सिद्ध हुन्छन् ।

**लोट्मा**- विध्यतु आदि, **लङ्मा** अविध्यत् आदि र **विधिलिङ्मा** विध्येत् आदि रूप हुन्छन् ।

**आशीर्लिङ्मा– विध्यात्**- 'व्यध्+यास्+ति' यहाँ यासुट् ङित् हुनाले "ग्रहिज्या०"ले संप्रसारण, तिका इकारको लोप, संगोगादि सकारको लोप भएर 'विध्यात्' सिद्ध हुन्छ । यस्तै प्रकारले विध्यास्ताम् विध्यासुः आदि रूप ऊह गर्नू । **लुङ्मा**– "वदव्रजहलन्तस्याचः"ले वृद्धि सर्वत्र हुन्छ । ताम्, तम्, तमा "झषस्तथोः०"ले धत्व हुन्छ । सबै रूप तल दिइन्छ ।

---

अव्यात्सीत् ॥ **पुष पुष्टौ** ॥१०॥ पुष्यति । पुपोष । पुपोषिथ । पोष्टा । पोक्ष्यति । पुषादीत्यङ् । अपुषत् ॥

| **व्यध् लुङ्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अव्यात्सीत् | अव्याद्धाम् | अव्यात्सुः |
| | मध्यमपुरुष | अव्यात्सीः | अव्याद्धम् | अव्याद्ध |
| | उत्तमपुरुष | अव्यात्सम् | अव्यात्स्व | अव्यात्स्म |

**लृङ्मा** अव्यत्स्यत् आदि रूप हुन्छन् ।

**पुष-** धातु मोटाउनु अर्थमा छ । यो धातु परस्मैपदी हो । (अनिट् अकर्मक )

**पुष्यति-** पुष् लट्, तिप्, श्यन्, य प्रत्ययको ङिद्वद्भाव, लघूपधगुणको निषेध भयो, 'पुष्यति' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध हुन्छन् ।

| **पुष लट्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | पुष्यति | पुष्यतः | पुष्यन्ति |
| | मध्यमपुरुष | पुष्यसि | पुष्यथः | पुष्यथ |
| | उत्तमपुरुष | पुष्यामि | पुष्यावः | पुष्यामः |
| **पुष लिट्-** | प्रथमपुरुष | पुपोष | पुपुषतुः | पुपुषुः |
| | मध्यमपुरुष | पुपोषिथ | पुपुषथुः | पुपुष |
| | उत्तमपुरुष | पुपोष | पुपुषिव | पुपुषिम |

**पोष्टा-** पुष् लुट्, तिप्, डा,तासि प्रत्यय, गुण, टिलोप, षत्व भयो, 'पोष्टा' सिद्ध भयो । यस्तै प्रकारले पोष्टारौ आदि रूप हुन्छन् ।

**पोक्ष्यति-** पुष् लृट्, तिप्, स्य प्रत्यय, गुण, षत्व भयो, 'पोष्+स्यति' यहाँ षकारको "षढोःकःसि"ले कत्व, षत्व, क्षत्व भयो, 'पोक्ष्यति' सिद्ध भयो ।

**लोट् लङ्, विधिलिङ्मा-** श्यन् प्रत्यय, गुणनिषेध हुन्छ, क्रमशः- पुष्यतु । अपुष्यत् । पुष्येत् आदि रूप हुन्छन् ।

**आशीर्लिङ्मा** पूर्ववत् रूप सिद्धि गर्नू । सबै रूप तल दिइन्छ ।

| **पुष आ.लि.-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | पुष्यात् | पुष्यास्ताम् | पुष्यासुः |
| | मध्यमपुरुष | पुष्याः | पुष्यास्तम् | पुष्यास्त |
| | उत्तमपुरुष | पुष्यासम् | पुष्यास्व | पुष्यास्म |

**लुङ्मा-** [९०] "पुषादिद्युताद्यलृदितः०"ले च्लिका स्थानमा अङ् हुन्छ ।

| **पुष लुङ्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अपुषत् | अपुषताम् | अपुषन् |
| | मध्यमपुरुष | अपुषः | अपुषतम् | अपुषत |
| | उत्तमपुरुष | अपुषम् | अपुषाव | अपुषाम |

९० धातुपाठमा पुषधातुदेखि लिएर दिवादिगणको अन्तिम गृधु धातुसम्म ६५ धातु पुषादिगणभित्र छन् । सबै परस्मैपदी धातु छन् । भ्वादिको द्युतादि गणमा २४ धातु परिगणन गरिएको छ । द्युतादि धातु आत्मनेपदी हुन् । लुङ्मा वैकल्पिक परस्मैपद हुन्छ ।

**शुष** शोषणे ॥११॥ शुष्यति । शुशोष । अशुषत् ॥ **णश** अदर्शने ॥१२॥ नश्यति । ननाश । नेशतुः ॥

**६३५. रधादिभ्यश्च ७ । २ । ४५ ॥**

रध् नश् तृप् दृप् द्रुह् मुह् ष्णुह् ष्णिह् एभ्यो वलाद्यार्धधातुकस्य वेट् स्यात् । नेशिथ ॥

**६३६. मस्जिनशोर्झलि ७।१।६०॥**

नुम् स्यात् । ननंष्ठ । नेशिव, नेश्व । नेशिम, नेश्म ।

---

**लृङ्मा**– अपोक्ष्यत्, अपोक्ष्यताम्, अपोक्ष्यन् आदि रूप हुन्छन् ।

**शुष** धातु सुक्नु अर्थमा छ । यो धातु परस्मैपदी हो । (अनिट् अकर्मक)

यो पुषादि धातु हुनाले च्लिका स्थानमा अङ् हुन्छ । यसका सबै रूप पुष धातुका जस्तै हुन्छन् । दिग्दर्शनार्थ मूलमा लट्, लिट् र लङ्का एक एक रूप दिएको छ ।

**णश** धातु नदेखिनु, नाश हुनु अर्थमा छ । अन्त्य अकारको इत्संज्ञा र लोप हुन्छ । "णो नः"ले णकारको नत्व हुन्छ । यो उदात्त धातु हो, तर "रधादिभ्यश्च" लाग्ने हुँदा वेट् भयो । वेट् हुनाले क्तमा अनिट् भयो । (वेट् अकर्मक)

**नश्यति**– नश् लट्, तिप्, श्यन् भयो, 'नश्यति' सिद्ध भयो । यस्तै प्रकारले नश्यतः, नश्यन्ति आदि रूप लट्मा हुन्छन् ।

**ननाश**– नश् लिट्, तिप्, णल्, 'नश्+अ', 'नश्+नश्+अ', 'ननश्+अ' भयो, 'ननाश' सिद्ध भयो ।

**नेशतुः**– 'नश्+अतुस्' द्वित्व, 'ननश्+अतुस्', एत्व र अभ्यासको लोप भयो, 'नेशतुः' सिद्ध भयो । यस्तै प्रकारले नेशुः पनि हुन्छ ।

**रधादीति**– रध्, नश्, तृप्, दृप्, द्रुह्, मुह्, ष्णुह्, ष्णिह् यी धातुदेखि पर रहेका वल् आदिमा हुने आर्धधातुकसंज्ञक प्रत्ययको विकल्पले इट् आगम होस् ।

**मस्जिनशोरिति**– मस्ज् धातु र नश् धातुको झलादि प्रत्यय पर भएमा नुम् होस् ।

**नेशिथ/ननंष्ठ**– नश् धातुदेखि लिट् सिप्, थल् 'नश्+थ' यहाँ "आर्धधातुकस्येड्०"लाई बाधेर "रधादिभ्यश्च"ले थल्को वैकल्पिक इट् आगम भयो, द्वित्व हलादिशेष भयो, 'ननश्+इथ' भएपछि, "थलिच सेटि०"ले एत्व र अभ्यासको लोप भयो, 'नेशिथ' सिद्ध भयो । इट् आगम नभएका पक्षमा 'नश्+थ' यहाँ "मस्जिनशोर्झलि"ले नश्को नुम् भयो, "मिदचोऽन्त्यात्परः" लगाएर नका अकारदेखि पर 'न्' भयो, 'नन्श्+थ' द्वित्व, 'नन्श्+नन्श्थ', हलादिशेष भयो, 'ननन्श्+थ', "व्रश्चभ्रस्जसृजमृज०"ले शकारको षकार भयो, ष्टुत्व भएर थकारका स्थानमा ठकार भयो, "नश्चापदान्तस्य०"ले नकारका स्थानमा अनुस्वार भयो, 'ननंष्ठ' सिद्ध भयो । अथुस्, अ, णल्, मा नेशथुः, नेश, ननाश/ननश यी रूप हुन्छन् ।

**नेशिव/नेश्व, नेशिम/नेश्म**– 'नश्+व', 'नश्+म', यहाँ "रधादिभ्यश्च" वैकल्पिक इट द्वित्वादि, एत्व र अभ्यासलोप भयो, 'नेशिव', 'नेशिम' यी रूप सिद्ध भए । इट् नभएका पक्षमा पनि द्वित्वादि भएपछि एत्व र अभ्यासको लोप भयो, नेश्व, नेश्म यी रूप सिद्ध भए ।

थल्मा इट् आगम भएमा मात्र एत्व र अभ्यासको लोप, 'थलि+च' सेटिले हुन्छ । व, ममा "अत एकहल्मध्ये०"ले इट् आगम भए पनि नभए पनि एत्व र अभ्यासको लोप हुन्छ ।

**नशिता/नंष्टा**– नश् धातुदेखि लुट्, तिप्, तासिप्रत्यय, 'नश्+तास्+ति' भएपछि "आर्धधातुकस्येड्०"लाई बाधेर "रधादिभ्यश्च"ले वैकल्पिक इट् भयो, 'नशितास्+ति+डा', टिलोप भयो, 'नशिता' सिद्ध भयो । इट् आगम नभएको पक्षमा "मस्जिनशोर्झलि"ले नश् धातुको नुम्

नशिता, नंष्टा । नशिष्यति , नङ्क्ष्यति । नश्यतु । अनश्यत् । नश्येत् । नश्यात् । अनशत् ॥ **षूङ्** प्राणिप्रसवे ॥१३॥ सूयते । सुषुवे । क्रादिनियमादिट् । सुषुविषे । सुषुविवहे ।

---

आगम भयो, 'नन्श्+तास्+ति' तिका स्थानमा डा, टिलोप "व्रश्चभ्रस्ज०"ले षत्व, ष्टुत्व, अनुस्वार भयो, 'नंष्टा' सिद्ध भयो ।

**इट् भएको पक्षमा–**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | नशिता | नशितारौ | नशितारः |
| मध्यमपुरुष | नशितासि | नशितास्थः | नशितास्थ |
| उत्तमपुरुष | नशिताऽस्मि | नशितास्वः | नशितास्मः |

**इट् नभएको पक्षमा–**

| प्रथमपुरुष | नंष्टा | नंष्टारौ | नंष्टारः |
|---|---|---|---|
| मध्यमपुरुष | नंष्टासि | नंष्टास्थः | नंष्टास्थ |
| उत्तमपुरुष | नंष्टास्मि | नंष्टास्वः | नंष्टास्मः |

**नशिष्यति/नङ्क्ष्यति**– नश् लृट्, तिप्, स्यप्रत्यय, स्यको "रधादिभ्यश्च"ले वैकल्पिक इट् षत्व भयो, 'नशिष्यति' सिद्ध भयो । इट् नभएको पक्षमा "मस्जिनशो०"ले नुम् 'नन्श्+स्यति' यहाँ "व्रश्चभ्रस्ज०"ले षत्व "षढोः कः सि"ले कत्व, स्यतिका सकारको षत्व, 'नन्+क्ष्यति' नन्का नकारका स्थानमा "नश्चापदान्तस्य०"ले अनुस्वार "अनुस्वारस्य ययि०"ले परसवर्ण भयो, 'नङ्क्ष्यति' सिद्ध भयो । यस्तै प्रकारले लृट्मा सर्वत्र दुई दुई रूप हुन्छन् ।

**लोट् लङ्, विधिलिङ् आशीर्लिङ्का**- एक एक रूप दिग्दर्शनार्थ मूलमा दिइएका छन् । यी लकारहरूमा विशेष प्रक्रिया छैन । पूर्ववत् सामान्य प्रक्रियाको स्मरण गर्नू । **लुङ्मा**- यो नश्धातु पुषादिभित्र पर्ने हुनाले "पुषादिद्युताद्य०"ले च्लिका स्थानमा अङ् हुन्छ र अनशत्, अनशताम्, अनशन् आदि रूप हुन्छन् । **लृङ्मा**– अनशिष्यत् । अनङ्क्ष्यत् आदि दुईथरी रूप हुन्छन् ।

**षूङ्** धातु प्राणिपैदा गर्नु अर्थमा छ । ङकारको इत्संज्ञा लोप हुन्छ । षकारको "धात्वादेः षः सः"ले सत्व हुन्छ । यो धातु आत्मनेपदी हो । (अनिट्, सर्कमक )

**सूयते**– सू लट्, त, एत्व, श्यन्, गुणनिषेध भयो, 'सूयते' सिद्ध भयो ।

**क्रादिनियमादिति- लिट्मा**– से, ध्वे, वहे, महे,मा "आर्धधातुस्येड्०"लाई बाधेर "स्वरतिसूति०"ले वैकल्पिक इट् पाउँछ, त्यसको "श्र्युकः किति"ले निषेध भएपछि "कृसृभृवृ०" लाएर नित्य इट् हुन्छ । ध्वम्मा "विभाषेटः"ले वैकल्पिक ढत्व हुन्छ । रूपहरू तल दिइन्छ-

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | सुषुवे | सुषुवाते | सुषुविरे |
| मध्यमपुरुष | सुषुविषे | सुषुवाथे | सुषुविढ्वे/सुषुविध्वे |
| उत्तमपुरुष | सुषुवे | सुषुविवहे | सुषुविमहे |

**सविता/सोता**– 'सू+तास्+ति' यहाँ "आर्धधातुकस्येड्०"ले नित्य इट्आगम पायो, त्यसलाई बाधेर "स्वरतिसूतिसूयति०"ले वैकल्पिक इट्आगम, गुण, अव्आदेश भयो, 'सवितास्+ति', डा,

सुषुविमहे । सविता, सोता ॥ **दूङ्** परितापे ॥१४॥ दूयते ॥ **दीङ्** क्षये ॥१५॥ **दीयते** ॥

**६३७. दीङो युडचि क्ङिति ६।४।६३॥**

दीङः परस्याजादेः क्ङित आर्धधातुकस्य युट् ।

---

टिलोप, 'सविता' सिद्ध भयो । इट् आगम नभएका पक्षमा 'सू+तास्+ति' यहाँ ऊकारका स्थानमा "सार्वधातुकार्ध०"ले गुण भयो, 'सो+तास्+ति', डा, टिलोप, 'सोता' सिद्ध भयो ।

**सू लुट्** (तासि प्रत्ययको इट् आगम भएको पक्षमा)–

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | सविता | सवितारौ | सवितारः |
| मध्यमपुरुष | सवितासे | सवितासाथे | सविताध्वे |
| उत्तमपुरुष | सविताहे | सवितास्वहे | सवितास्महे |

**सू लुट्** (तासि प्रत्ययको इट् आगम नभएको पक्षमा)–

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरष | सोता | सोतारौ | सोतारः |
| मध्यमपुरुष | सोतासे | सोतासाथे | सोताध्वे |
| उत्तमपुरुष | सोताहे | सोतास्वहे | सोतास्महे |

**लृट्**– सविष्यते, सोष्यते, इत्यादि रूप हुन्छन् ।

**लोटमा**– सूयताम्, **लङ्मा** असूयत, **विधिलिङ्मा**– सूयेत, **आशीर्लिङ्मा** सविषीष्ट/सोषीष्ट, **लृङ्मा** असविष्यत/असोष्यत, आदि रूप हुन्छन् ।

दूङ्– धातु खिन्न हुनु, दुःख मान्नु अर्थमा छ । यो धातु आत्मनेपदी हो । (सेट् अकर्मक) **लट्मा** दूयते, दूयेते, दूयन्ते आदि रूप हुन्छन् ।

**लिट्मा**– "आर्धधातुकस्येड्वलादेः"ले पाएको इट् आगम "श्र्युकः किति"ले निषेध हुन्छ र क्रादि नियमले से, ध्वे, वहे, महेमा नित्य इट् आगम हुन्छ । ध्वेमा "विभाषेटः"ले ढत्व विकल्पले हुन्छ ।

| दू लिट् | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | दुदुवे | दुदुवाते | दुदुविरे |
| | मध्यमपुरुष | दुदुविषे | दुदुवाथे | दुदुविढ्वे/दुदुविध्वे |
| | उत्तमपुरुष | दुदुवे | दुदुविवहे | दुदुविमहे |

**लुट्**– लुट्मा कित्व नहुनाले "श्र्युकः किति" लाग्दैन । दविता, दविष्यते आदि रूप हुन्छन् ।

**लोट्मा**– दूयताम्, **लुङ्मा** अदूयत, **विधिलिङ्मा** दूयेत, **आशीर्लिङ्मा** दविषीष्ठ, **लुङ्मा** अदविष्ट, **लृङ्मा**, अदविष्यत आदि रूप हुन्छ ।

**दीङ्** धातु नाश हुनु **अर्थमा छ** । यो धातु **आत्मनेपदी** हो । (अनिट् अकर्मक)

| दी. लट्– | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | दीयते | दीयेते | दीयन्ते |
| | मध्यमपुरुष | दीयसे | दीयेथे | दीयध्वे |
| | उत्तमपुरुष | दीये | दीयावहे | दीयामहे |

**दीङ् इति**– दीङ् धातुदेखि पर रहेका अजादि कित् र ङित् आर्धधातुकसंज्ञक प्रत्ययको युट् आगम होस् । यो आगम प्रत्ययको हो, धातुको हैन । अतः "आद्यन्तौ टकितौ" लगाएर प्रत्ययको आदिमा हुन्छ ।

**वा.**(वुग्युटावुवङ्यणोः सिद्धौ वक्तव्यौ) । दिदीये ॥

६३८. **मीनातिमिनोतिदीङां ल्यपि च ६।१।५०॥**

एषामात्त्वं स्याल्ल्यपि चादशित्येज्निमित्ते । दाता । दास्यति । **वा.** (स्थाघ्वोरित्त्वे दीङः प्रतिषेधः) । अदास्त ॥ **डीङ्** विहायसा गतौ ॥१६॥

---

(वा०) **वुग्युटाविति**– वुक् आगम र युट् आगम उवङ् र यण्का दृष्टिमा सिद्ध होऊन् भन्नू ।

**दिदीये**– दी लिट्, त, एश्, द्वित्व, अभ्यासकार्य, 'दिदी+ए' यहाँ "दीङो युडचि०"ले युट् भयो, 'दिदी+ये' यहाँ "असिद्धवदत्राभात्"ले युट् असिद्ध भएर युट् आगम नदेखेकोले अजादि प्रत्यय पर मानेर "एरनेकाचोऽसंयोगपूर्वस्य"ले यण् पायो, तब "वुग्युटावुवङ्यणोः सिद्धौ वक्तव्यौ" यस वार्तिकले सिद्ध नै गऱ्यो हलादि प्रत्यय परभएको देख्यो र यण् भएन 'दिदीये' यही सिद्ध भयो ।

| **दी लिट्**– | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | दिदीये | दिदीयाते | दिदीयिरे |
| | मध्यमपुरुष | दिदीयिषे | दिदीयाथे | दिदीयिढ्वे/ध्वे |
| | उत्तमपुरुष | दिदीये | दिदीयिवहे | दिदीयिमहे |

**मीनातीति**– क्र्यादिको मी धातु स्वादिको मि धातुको दीङ् धातु, यिनीहरूको ल्यप् पर भएमा र शित् भिन्न एच्निमत्तक प्रत्ययको विवक्षामा पनि आकार अन्तादेश होस् ।

एच् निमित्तक भन्नाले जुन प्रत्यय पर मानेर धातुका स्थानमा ए, ओ, ऐ, औ अर्थात् गुण र वृद्धि आदेश गरिन्छन्, त्यस्तो प्रत्ययको विवक्षा हो । यहाँ तासि प्रत्यय पर भएमा गुण पाउने हुनाले यो तासि एच् निमित्तक प्रत्यय छ ।

**दाता**– लुट्मा 'दी+तास्+ति' यहाँ तासि प्रत्ययको "सार्वधातुका०"ले गुण पायो, त्यसलाई वाधेर "मीनाति०" आकार अन्तादेश भएर 'दातास्+ति' भयो, डा, टिलोप भयो, 'दाता' सिद्ध भयो । यस्तै प्रकारले अन्यत्र पनि दी धातुका स्थानमा आकार अन्तादेश भएर दा भएपछि डुदाञ् दाने धातुको लुट् लकारको आत्मनेपदमा जस्तै रूप हुन्छन् ।

**लृट्मा**– पनि पूर्ववत् आत्व भएपछि दास्यते आदि रूप हुन्छन् ।

**लोट्, लङ् र विधिलिङ्मा** क्रमशः दीयताम्, अदीयत, दीयेत, आदिरूप हुन्छन् । एच् निमित्तक प्रत्यय पर नहुनाले आत्व हुदैन । **आशीर्लिङ्मा** आत्व हुन्छ दासीष्ट आदि रूप हुन्छन् ।

(वा०) **स्थाघ्वोरिति**– स्थाध्वोरिच्च भन्ने सूत्रले इत्व पाएमा दीङ् धातुको निषेध होस् ।

**अदास्त**– लुङ्मा 'अदी+स्+त' भएपछि "मीनातिमिनोति०"ले आत्व भयो 'अदास्त, यहाँ दा रूप हुने धातु छ र घुसंज्ञा भएपछि "स्थाघ्वोरिच्च"ले इत्व पायो त्यसको "स्थाघ्वोरित्वे०" यस वार्तिकले निषेध भयो, 'अदास्त' सिद्ध भयो । यस्तै प्रकारले लुङ्मा अन्यत्र पनि आत्व हुन्छ ।

| **दी लुङ्**– | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अदास्त | अदासाताम् | अदासत |
| | मध्यमपुरुण | अदास्थाः | अदासाथाम् | अदाध्वम् |
| | उत्तमपुरुण | अदासि | अदास्वहि | अदास्महि |

**लृङ्मा** अदास्यत आदि रूप हुन्छन् ।

**डीङ्** धातु आकाशमार्गले हिंड्नु अर्थमा छ । ङकारको इत्संज्ञा, लोप हुन्छ । ङित् हुनाले यो धातु आत्मनेपदी हो, "ऊदॄदन्तैः०" यसकारिकामा पाठ हुनाले सेट् हो, गन्तव्यस्थल कर्म हुनाले सकर्मक हो ।

**डीयते** । डिड्ये । डयिता ॥ **पीङ्** पाने ॥१७॥ पीयते । पेता । अपेष्ट ॥ **माङ्** माने ॥१८॥ मायते । ममे ॥ **जनी** प्रादुर्भावे ॥१९॥

६३९. **ज्ञाजनोर्जा ७।३।७९॥**

अनयोर्जादेशः स्याच्छिति । जायते । जज्ञे । जनिता । जनिष्यते ॥

---

**लट्मा**- डीयते आदि रूप हुन्छन् । **लिट्मा** द्वित्व गर्नु भन्दा पहिले इयङ् पाएमा "द्विर्वचनेऽचि"ले द्वित्वको निषेध भएपछि "एरनेकाच"ले यण् हुन्छ । डिड्ये, डिड्याते, डिडियरे आदि रूप हुन्छन् । **लुट्**आदि लकारमा क्रमशः डयिता । डयिष्यते । डीयताम् । अडीयत । डीयेत । डयिषीष्ट । अडयिष्ट । अडयिष्यत आदि रूप हुन्छन् । सेट् धातु हुनाले इट् आगम पाउने ठाँउमा कहीँ निषेध हुँदैन । प्रायः यो उद् उपसर्ग पूर्वमा भएको प्रयोगमा पाइन्छ । लट्आदि लकारको दिग्दर्शन जस्तै- उड्डीयते । उड्डिड्ये । उड्डयिता । उड्डयिष्यते । उड्डीयताम् । उदडीयत । उड्डीयेत । उड्डयिषीष्ट । उदडयिष्ट । उदडयिष्यत आदि रूप हुन्छन् ।

**पीङ्** धातु पिउनु अर्थमा छ । ङित्त्वात् आत्मनेपदी हो । (अनिट् सकर्मक) लट्मा पीयते आदि रूप हुन्छन् । लिट्मा क्रादिनियमले नित्य इट् हुन्छ । अन्यत्र इट् आगमको निषेध हुन्छ ।

**माङ्** धातु नाप्नु अर्थमा छ । ङकारको इत्संज्ञा लोप हुन्छ । यो धातु आत्मनेपदी हो । (अनिट् सकर्मक)

लट् आदि लकारका शुरुका एक-एक रूप दिग्दर्शनका निमित्त तल दिइन्छ- मायते । ममे । माता । मास्यते । मायताम् । अमायत । मायेत । मासीष्ट । अमास्त । अमास्यत ।

**जनी**धातु जन्मनु अर्थमा छ । दीर्घ ईकारको इत्संज्ञालोप हुन्छ, यो धातु आत्मनेपदी हो (सेट् अकर्मक)

**ज्ञाजनोरिति**- ज्ञा धातु र जन् धातुका स्थानमा जा आदेश होस् शित् प्रत्यय परभएमा ।

**जायते**- जन् लट्, त, एत्व, श्यन् प्रत्यय 'जन्+यते' भएपछि [९१] जन्का स्थानमा "ज्ञाजनोर्जा"ले शित् प्रत्यय पर हुनाले जा आदेश भयो जायते सिद्ध भयो ।

| जन् लट्- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | जायते | जायेते | जायन्ते |
| | मध्यमपुरुष | जायसे | जायेथे | जायध्वे |
| | उत्तमपुरुष | जाये | जायावहे | जायामहे |

**जज्ञे**- लिट् लकारमा 'जन्+ए' भएपछि द्वित्व, 'जन्+जन्+ए', हलादिशेष 'ज+जन् ए' "गमहनजनखनघसां लोपः०"ले उपधालोप, 'जज्+न्+ए', श्चुत्व, 'जज्+ञ्+ए' भएपछि जकार र ञकार मिलेर ज्ञ भयो, 'जज्ञे' सिद्ध भयो । यस्तै प्रकारले सर्वत्र उपधालोप हुन्छ । किनकि जन धातु सेट् हुनाले हलादि विभक्तिमा इट् हुन्छ । सबै अजादि विभक्ति हुन आउँछन् । सबै अपित् छन् र आदिमा संयोग नहुनाले सबै कित् छन् । सबै रूप तल दिइन्छ-

| जन् लिट्- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | जज्ञे | जज्ञाते | जज्ञिरे |
| | मध्यमपुरुष | जज्ञिषे | जज्ञाथे | जज्ञिध्वे |
| | उत्तमपुरुष | जज्ञे | जज्ञिवहे | जज्ञिमहे |

**लुट्मा**- जनिता, आदि । **लृट्मा**- जनिष्यते आदि । **लोट्मा**- जायताम् आदि । **लङ्मा**- अजायत आदि **विधिलिङ्मा** जायेत आदि **आशीर्लिङ्मा** जनिषीष्ट आदि रूप हुन्छन् ।

---

९१ । जा अनेकाल् हुनाले जन् पूरैका स्थानमा हुन्छ ।

६४०. **दीपजनबुधपूरितायिप्यायिभ्योऽन्यतरस्याम् ३।१।६१॥**

एभ्यश्च्लेश्चिण् वा स्यादेकवचने तशब्दे परे ॥

६४१. **चिणो लुक् ६।४।१०४॥**

चिणः परस्य तशब्दस्य लुक् स्यात् ॥

६४२. **जनिवध्योश्च ७।३।३५॥**

अनयोरुपधाया वृद्धिर्न स्याच्चिणि ञ्णिति कृति च । अजनि, अजनिष्ट ॥ **दीपी** दीप्तौ ॥२०॥ दीप्यते । दिदीपे । अदीपि, अदीपिष्ट ॥ **पद** गतौ ॥२१॥ पद्यते पेदे । पत्ता पत्सीष्ट ॥

६४३. **चिण् ते पदः ३।१।६०॥**

पदेश्च्लेश्चिण् स्यात्तशब्दे परे । अपादि ।

---

**दीपजनेति**– दीप, जन, बुध, पूर, ताय, प्याय, यी धातुदेखि पर रहेका च्लिका स्थानमा चिण् विकल्पले होस् एकवचन त शब्द परभएमा

**चिण इति**– चिण्देखि पर रहेका त शब्दको लुक् होस् ।

**जनिवध्योरिति**– जन धातु र वध धातुका उपधाका स्थानमा वृद्धि नहोस् चिण् र ञकार णकारको इत्संज्ञा हुने प्रत्यय परभएमा ।

**अजनि/अजनिष्ट**– जन् धातुदेखि लुङ्, अट् आगम, त, च्लि, 'अजन्+च्लि+त' भएपछि "दीपजनबुधपूरी०"ले च्लिका स्थानमा चिण् भयो, चिण्का चकार णकारको इत्संज्ञा लोप भयो, 'अजन्+इ+त' भएपछि तको "चिणो लुक्"ले लुक् भयो, 'अजन्+इ' यहाँ "अत उपधायाः"ले वृद्धि पायो "जनिवध्योश्च"ले निषेध भयो 'अजनि' सिद्ध भयो । "दीपजन०"ले चिण् नभएको पक्षमा च्लिका स्थानमा सिच् भयो, 'अजन्+स्+त' यहाँ सिच्को इट् आगम भयो, 'अजनिस्त' षत्व, ष्टुत्व भयो, 'अजनिष्ट' सिद्ध भयो । त बाहेक अन्यत्र नित्य सिच् हुन्छ । सिच्को इट् आगम हुन्छ र षत्व हुन्छ ।

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अजनि/अजनिष्ट | अजनिषाताम् | अजनिषत |
| मध्यमपुरुष | अजनिष्ठाः | अजनिषाथाम् | अजनिढ्वम् |
| उत्तमपुरुष | अजनिषि | अजनिष्वहि | अजनिष्महि |

**लृट्मा**– अजनिष्यत, अजनिष्येताम्, अजनिष्यन्त आदि रूप हुन्छन् ।

**दीपी** धातु प्रकाश हुनु अर्थमा छ पीका ईकारको इत्संज्ञा लोप हुन्छ । यो धातु आत्मनेपदी हो । (सेट् अकर्मक)

**लट्मा** दीप्यते । **लिट्मा** दिदीपे । **लुट्मा** दीपिता । **लृट्मा** दीपिष्यते । **लोट्मा** दीप्यताम् । **लङ्मा** अदीप्यत । **विधिलिङ्मा** दीप्येत । **आशीर्लिङ्मा** दीपिषीष्ट । **लुङ्मा** अदीपि/अदीपिष्ट । **लृङ्मा** अदीपिष्यत आदि रूप हुन्छन् ।

**पद** धातु हिंड्नु अर्थमा छ। यो धातु आत्मनेपदी हो । (अनिट् उपसर्ग योगमा अर्थानुसार सकर्मक अकर्मक दुवै ) लट्देखि आशीर्लिङ्सम्मका लकारका शुरुका एक एक रूप तल दिइन्छ-

पद्यते । पेदे । पत्ता । पत्स्यते । पद्यताम् । अपद्यत । पद्येत । पत्सीष्ट ।

**चिणत इति**– पद धातुदेखि पररहेका च्लिका स्थानमा चिण् होस् एकवचन तशब्द पर भएमा ।

**अपादि**– अपद् च्लित भएपछि "चिण् ते पदः"ले च्लिका स्थानमा चिण् भयो "चिणो लुक्"ले तको लुक् भयो, 'अपद्+इ' यहाँ चिण्मा णित्व हुनाले "अत उपधायाः"ले वृद्धि भयो, 'अपादि' सिद्ध भयो ।

अपत्साताम् । अपत्सत ॥ **विद** सत्तायाम् ॥२२॥ विद्यते । वेत्ता । अवित्त ॥ **बुध** अवगमने ॥२३॥ बुध्यते । बोद्धा । भोत्स्यते । भुत्सीष्ट । अबोधि, अबुद्ध । अभुत्साताम् ॥ **युध** संप्रहारे ॥२४॥ युध्यते । युयुधे । योद्धा ।

---

**लुङ्मा-** त बाहेक अरू विभक्तिमा च्लिका स्थानमा सिच् हुन्छ । यो धातु अनुदात्त हुनाले इट्आगमको निषेध हुन्छ । थास् र ध्वम्मा सकारको लोप हुन्छ । रूप तालिका तल दिइन्छ ।

| पद् लुङ्- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अपादि | अपत्साताम् | अपत्सत |
| | मध्यमपुरुष | अपत्थाः | अपत्साथाम् | अपद्ध्वम् |
| | उत्तमपुरुष | अपत्सि | अपत्स्वहि | अपत्स्महि |

उपसर्गको योगमा अर्थको भिन्नता-

| | | |
|---|---|---|
| प्रपद्यते (प्राप्त हुन्छ) | आपद्यते (आपत्तिमा पर्छ) | विपद्यते (दुःखी हुन्छ) |
| सम्पद्यते (सम्पन्न हुन्छ) | उत्पद्यते (जन्मन्छ) | निष्पद्यते (निष्पन्न हुन्छ) |
| प्रतिपद्यते (जान्दछ) | उपपद्यते (सिद्ध हुन्छ) | |

**विद** धातु रहनु अर्थमा छ । अकारको इत्संज्ञा, लोप हुन्छ । यो धातु आत्मनेपदी हो । (अनिट् अकर्मक ) दिग्दर्शनको निमित्त प्रत्येक लकारका शुरुका एक एक रूप तल दिइन्छ-

विद्यते । विविदे । वेत्ता । वेत्स्यते । विद्यताम् । अविद्यत । विद्येत । वित्सीष्ट । अवित्त । अवेत्स्यत ।

वित्सीष्ट, यहाँ "लिङ्सिचावात्मनेपदेषु"ले सिच्को कित्व हुन्छ ।

**बुध** धातु जान्नु अर्थमा छ । अकारको इत्संज्ञा र लोप हुन्छ । आत्मनेपदी हो । (अनिट् अकर्मक) दिग्दर्शनको निमित्त **लट्देखि आशीर्लिङ्**सम्मका लकारका एक एक रूप तल दिइन्छ-

बुध्यते । बुबुधे । बोद्धा । भोत्स्यते । बुध्यताम् । अबुध्यत । बुध्येत । भुत्सीष्ट ।

**लुङ्को-** तमा च्लिका स्थानमा वैकल्पिक चिण् हुन्छ । लुङ् लकारका सबै रूप तल दिइन्छ ।

| बुध् लुङ्- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अबोधि / अबुद्ध | अभुत्साताम् | अभुत्सत |
| | मध्यमपुरुष | अबुद्धाः | अभुत्साथाम् | अभुद्ध्वम् |
| | उत्तमपुरुष | अभुत्सि | अभुत्स्वहि | अभुत्स्महि |

**लृङमा-** अभोत्स्यत आदि रूप हुन्छन् ।

**युध** धातु लडाइँ गर्नु अर्थमा छ । अकारको इत्संज्ञा, लोप हुन्छ । (आत्मनेपदी अनिट् सकर्मक)

**युध्यते-** युध् धातुदेखि लट्, त, एत्व, श्यन्, ङित्वात् लघूपधगुणको निषेध भयो, 'युध्यते' सिद्ध भयो ।

**युयुधे-** युध् लिट्, त, एश्, 'युध्+युध्+ए', 'युयुध् ए', 'युयुधे' सिद्ध भयो ।

**योद्धा-** लुट् लकारमा 'युध्+तास्+त', यहाँ गुण, 'योध्+तास्+त', धत्व, 'योध्+धास्+त' जश्त्व, 'योद्धास्+त', डा, 'यो+द्धास्+आ' टिलोप भयो, 'योद्धा' सिद्ध भयो । यस्तै प्रकारले पूर्वप्रक्रिया संझेर रूप सिद्ध गर्नू ।

| युध् लुट्- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | योद्धा | योद्धारौ | योद्धारः |
| | मध्यमपुरुष | योद्धासे | योद्धासाथे | योद्धाध्वे |
| | उत्तमपुरुष | योद्धाहे | योद्धास्वहे | योद्धास्महे |

अयुद्ध ॥ **सृज** विसर्गे ॥२५॥ सृज्यते । ससृजे । ससृजिषे ॥

**६४४. सृजिदृशोर्झल्यमकिति ६।१।५८॥**

अनयोरमागमः स्याज्झलादावकिति । स्रष्टा । स्रक्ष्यते । सृक्षीष्ट ।

---

**लृट्मा**– योत्स्यते आदि । **लोट्मा** युध्यताम् आदि । **लङ्मा** अयुध्यत आदि । **विधिलिङ्मा** युध्येत आदि । **आशीर्लिङ्मा** युत्सीष्ट आदि रूप हुन्छन् । आशीर्लिङ्मा "लिङ्सिचावात्मनेपदेषु"ले सीयुट्को कित्व हुन्छ ।

**अयुद्ध**– युध् लुङ्, 'अयुध्+ल', 'अयुध्+त', 'अयुध्+स्+त', सिच्को सकारको लोप, 'अयुध्+त', धत्व, जश्त्व भयो, 'अयुद्ध' सिद्ध भयो । यस्तै प्रकारले पूर्ववत् प्रक्रिया सम्झेर रूप सिद्ध गर्नू । सबै रूप तल दिइन्छ ।

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अयुद्ध | अयुत्साताम् | अयुत्सत |
| मध्यमपुरुष | अयुद्धाः | अयुत्साथाम् | अयुद्ध्वम |
| उत्तमपुरुष | अयुत्सि | अयुत्स्वहि | अयुत्स्महि |

**लृङ्मा**– अयोत्स्यत आदि रूप हुन्छन् ।

**सृज** धातु सृष्टि गर्नु अर्थमा छ । अकारको इत्संज्ञा लोप हुन्छ । यो धातु आत्मनेपदी अनिट् सकर्मक हो ।

**लट्मा**– सृज्यते आदि रूप हुन्छन् ।

**लिट्मा**– से, ध्वे, वहे, महेमा क्रादिनियमले नित्य इट् हुन्छ । यो ऋकारान्त धातु हैन ।

**सृजिदृशोरिति**– सृज् धातु र दृश् धातुको अम् आगम होस्, झल् आदिमा हुने कित्‌भिन्न प्रत्यय पर भएमा ।

**स्रष्टा**– सृज् धातुदेखि लुट्, त, तासि प्रत्यय, "एकाच०"ले इट्निषेध भयो, 'सृज्+तास्+त' यहाँ "सृजिदृशोर्झल्यमकिति"ले "मिदचोऽन्त्यात्परः" लगाएर सृका ऋकारदेखि पर अम् आगम ( अ) भयो, 'सृ+अज्+तास्+त', यण्, 'स्रज्+तास्+त', "व्रश्चभ्रस्जसृज०"ले षत्व, (जकारका स्थानमा षकार) 'स्रष्+तास्+त', डा, टिलोप भयो, स्रस्ता, ष्टुत्व भयो, 'स्रष्टा' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि हुन्छन् ।

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | स्रष्टा | स्रष्टारौ | स्रष्टारः |
| मध्यमपुरुष | स्रष्टासे | स्रष्टासाथे | स्रष्टाध्वे |
| उत्तमपुरुष | स्रष्टाहे | स्रष्टास्वहे | स्रष्टास्महे |

**स्रक्ष्यते**– लृट्मा 'सृज्+स्य+ते' भएपछि, पूर्ववत् "सृजिदृशोः"ले अम् आगम, यण् भयो, 'स्रज्+स्यते', "व्रश्चभ्रस्ज०"ले षत्व, "षढोः कः सि"ले कत्व, 'स्रक्+स्यते' षत्व, क्षत्व, 'स्रक्ष्यते' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप सिद्ध गर्नू ।

**लोट्मा** सृज्यताम् आदि । **लङ्मा** असृज्यत आदि । **विधिलिङ्मा** सृज्येत आदि रूप हुन्छन् ।

**सृक्षीष्ट**- आशीर्लिङ्मा 'सृज्+सीय्+स्+त' भएपछि यलोप, 'सृज्+सीस्+त', यहाँ "लिङ्सिचावात्मनेपदेषु"ले सीयुट्को कित्व भएको छ र अम् आगम भएन, गुणनिषेध भयो कुत्व दुवै सकारका स्थानमा षत्व, ष्टुत्व, 'सृक्+षीष्ट', ककार र षकारको संयोग भएर क्षकार भयो,

अमृष्ट । असृक्षाताम् ॥ **मृष** तितिक्षायाम् ॥२६॥ मृष्यति, मृष्यते । ममर्ष । ममर्षिथ । ममृषिषे ।

'सृक्षीष्ट' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप सिद्ध गर्नू ।

| सृज् आ.लि. | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | सृक्षीष्ट | सृक्षीयास्ताम् | सृक्षीरन् |
| | मध्यमपुरुष | सृक्षीष्ठाः | सृक्षीयास्थाम् | सृक्षीध्वम् |
| | उत्तमपुरुष | सृक्षीय | सृक्षीवहि | सृक्षीमहि |

**असृष्ट**- लुङ्मा 'असृज्+स्+त' यहाँ सिच् कित् हुनाले अम् आगम पनि भएन, "वदव्रज०"ले पाएको वृद्धि पनि निषेध भयो । "झलो झलि"ले सकारको लोप भयो, "व्रश्च०"ले जकारको षकार भयो, ष्टुत्व भयो, 'असृष्ट' सिद्ध भयो ।

**असृक्षाताम्**- आताम्मा 'असृज्+स्+आताम्', षत्व, कुत्व, क्षत्व भयो, 'असृक्षाताम्' सिद्ध भयो ।

**असृड्ढ्वम्**- ध्वम्मा, षत्व, जश्त्व, ष्टुत्व भयो, 'असृड्ढ्वम्' सिद्ध भयो । सबै रूप तल दिइन्छ -

| सृज् लुङ् | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | असृष्ट | असृक्षाताम् | असृक्षत |
| | मध्यमपुरुष | असृष्ठाः | असृक्षाथाम् | असृड्ढ्वम् |
| | उत्तमपुरुष | असृक्षि | असृक्ष्महि | असृक्ष्महि |

| लृङ्मा- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अस्रक्ष्यत | अस्रक्ष्येताम् | अस्रक्ष्यन्त |
| | मध्यमपुरुष | अस्रक्ष्यथाः | अस्रक्ष्येथाम् | अस्रक्ष्यध्वम् |
| | उत्तमपुरुष | अस्रक्ष्ये | अस्रक्ष्यावहि | अस्रक्ष्यामहि |

**मृष** धातु सहनु अर्थमा छ । अकारको इत्संज्ञा, लोप हुन्छ । यो धातु उभयपदी हो ।(सेट् सकर्मक)

**मृष्यति**-लट् परस्मैपदमा मृष् लट्, तिप्, श्यन्, ङित्वात्, गुणनिषेध भयो, 'मृष्यति' सिद्ध भयो । अरू रूप आफै ऊह गर्नू ।

**मृष्यते**- लट् आत्मनेपदमा मृष् लट्, त, श्यन्, ङित्वाद्, गुणनिषेध भयो, 'मृष्यते' सिद्ध भयो । अरू रूप आफै ऊह गर्नू ।

**ममर्ष**- लिट् परस्मैपदमा मृष् लिट्, तिप्, णल्, द्वित्व अभ्यासकार्य 'ममृष्+अ', गुण 'ममर्ष' सिद्ध भयो ।

**ममृषतुः, ममृषुः**- यी दुवै ठाउँमा कित्वाद् गुणनिषेध हुन्छ र रूप सिद्ध हुन्छन् ।

**ममर्षिथ**- थल्मा 'मृष्+इथ', मृष्मृष् इथ, अभ्यासकार्य, 'ममृष्+इथ' गुण भयो, 'ममर्षिथ' सिद्ध भयो ।

**ममृषथुः, ममृष**- अथुस् अमा कित्वाद्, गुणनिषेध भयो र उक्त रूप सिद्ध भयो ।

**ममर्ष, ममृषिव, ममृषिम**- उत्तमपुरुष णल्, अतुस्, उस्मा कित्वाद् गुणनिषेध भयो, र रूप सिद्ध भए ।

**लिट् आत्मनेपदमा** कित्वात् सर्वत्र गुणनिषेध हुन्छ । सबै रूप तल दिइन्छ ।

| मृष लिट् | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | ममृषे | ममृषाते | ममृषिरे |
| | मध्यमपुरुष | ममृषिषे | ममृषाथे | ममृषिध्वे |
| | उत्तमपुरुष | ममृषे | ममृषिवहे | ममृषिमहे |

**मर्षितासि । मर्षितासे । मर्षिष्यति, मर्षिष्यते ॥ णह** बन्धने ॥२७॥ नह्यति, नह्यते ननाह । नेहिथ, ननद्ध । नेहे । नद्धा । नत्स्यति । अनात्सीत्, अनद्ध ॥

**इति दिवादयः ॥४॥**

---

लुट् प्रथमपुरूषमा परस्मैपद र आत्मनेपदमा मर्षिता, मर्षितारौ, मर्षितारः एकै प्रकारका रूप हुन्छन् । मध्यमपुरूष र उत्तमपुरुषका रूप- परस्मैपदमा मर्षितासि, मर्षितास्थः, मर्षितास्थ, मर्षितास्मि, मर्षितास्वः, मर्षितास्मः यी रूप हुन्छन् । आत्मनेपदमा मर्षितासे, मर्षितासाथे, मर्षिताध्वे । मर्षिताहे, मर्षितास्वहे, मर्षितास्महे यी रूप हुन्छन् । साधन प्रक्रिया पूर्ववत् स्मरण गर्नू ।

**लृट्मा** मर्षिष्यति, मर्षिष्यते आदि । **लोट्मा** मृष्यतु, मृष्यताम् आदि । **लङ्मा** अमृष्यत्, अमृष्यत आदि । **विधिलिङ्मा** मृष्येत्, मृष्येत आदि । **आशीर्लिङ्मा** मृष्यात् मर्षिषीष्ट आदि रूप हुन्छन् । **लुङ्मा** "नेटि"ले हलन्तलक्षण वृद्धिको निषेध गर्दछ र 'अमर्षीत्', 'अमर्षिष्ट' आदि रूप हुन्छन् । **लृङ्मा** अमर्षिष्यत्, अमर्षिष्यत आदि रूप बन्दछन् ।

**णह** धातु बाँध्नु अर्थमा छ "णो नः"ले णकारको नकार हुन्छ । हको अकार स्वरित हो, इत्संज्ञा भएर लोप हुन्छ । यो धातु उभयपदी हो । (अनिट् सकर्मक)

**लट्मा-** नह्यति, नह्यते आदि रूप हुन्छन् ।

**लिट्मा-** कित्, लिट् र सेट् थल्मा एत्व र अभ्यासको लोप हुन्छ ।

**नेहिथ/ननद्ध-** नह धातुदेखि लिट्, सिप्, थल्, 'नह्+थ' भएपछि थल्को "एकाच०"ले इट् आगम निषेध भएपछि क्रादिनियमले नित्य इट पाएकोमा नह् धातु तासि प्रत्ययमा नित्यानिट् अकारवान् धातु हुनाले "उपदेशेत्वतः"ले पुनः इट्निषेध भयो, "ऋतो भारद्वाजस्य"लाएर वैकल्पिक इट् आगम भयो, इट् आगम भएको पक्षमा एत्व, अभ्यासको लोप भयो, 'नेहिथ' इट्आगम नभएको पक्षमा 'ननह्+थ' यहाँ "नहो धः"ले धत्व भयो, 'ननध्+थ' भयो, "झषस्तथोः"ले थकारका स्थानमा धकार, पूर्वधकारको जश्त्व, भएर दकार भयो, 'ननद्ध' सिद्ध भयो ।

**बाँकी रूप-** नेहथुः, नेह । ननाह/ननह, नेहिव, नेहिम ।

**आत्मनेपदमा-** नेहे, नेहाते, नेहिरे इत्यादि रूप हुन्छन् । सर्वत्र एत्व र अभ्यास लोप हुन्छ ।

**नद्धा-** लुट्मा परस्मैपदमा– 'नह्+तास्+ति', 'नह्+तास्+आ', "नहो धः", 'नध्+तास्+आ', "झषस्तथोः०"ले धत्व, जश्त्व, टिलोप, 'नद्धा' सिद्ध भयो । यस्तै प्रकारले 'नद्धारौ', 'नद्धारः' आदि रूप पनि सिद्ध हुन्छन् ।

यस्तै आत्मनेपदमा पनि प्रथमपुरुषमा समान रूप हुन्छन् । मध्यमपुरुषमा र उत्तमपुरुषमा पूर्ववत् ऊह गर्नू ।

**नत्स्यति-** लृट् परस्मैपदमा 'नह्+स्यति', भएपछि "नहो धः"ले धत्व, "खरि च"ले चर्त्व भयो, 'नत्स्यति' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप सिद्ध गर्नू । आत्मनेपदमा नत्स्यते आदि रूप हुन्छन् ।

**लोट्** आदि लकारमा आत्मनेपद र परस्मैपदका एक एक रूप तल दिइन्छ ।

**लोट्मा** नह्यतु, नह्यताम्, **लङ्मा** अनह्यत्, अनह्यत । **विधिलिङ्मा** नह्येत्, नह्येत । **आशीर्लिङ्मा** नह्यात्, नत्सीष्ट । **लुङ्मा** अनात्सीत् । अनद्ध । **लृङ**मा अनत्स्यत्, अनत्स्यत ।

**दिवादि गण समाप्त भयो ।**

----------------

## अथ स्वादयः

षुञ् अभिषवे ॥१॥

**६४५. स्वादिभ्यः श्नुः ३।१।७३॥**

शपोऽपवादः । सुनोति । सुनुतः । हुश्नुवोरिति यण् । सुन्वन्ति । सुन्वः, सुनुवः । सुनुते । सुन्वाते । सुन्वते । सुन्वहे, सुनुवहे । सुषाव,

---

### अब स्वादिगण शुरू हुन्छ

**षुञ्** धातु अभिषव अर्थमा छ । अभिषव भनेको निचोर्नु, स्नान गराउनु, स्नान गर्नु, मदिरा बनाउनु, हो । षुञ्का ञकारको इत्संज्ञा र लोप हुन्छ । षकारको "धात्वादेः षः सः"ले सत्व हुन्छ र सु धातु बन्छ । यो धातु उभयपदी हो । (अनिट्, अर्थ भेदले सकर्मक अकर्मक दुवै)

**स्वादिभ्य इति–** स्वादि गणपठित धातुदेखि श्नु प्रत्यय होस् कर्ता अर्थमा विधान गरिएको सार्वधातुक प्रत्यय पर भएमा । यो श्नु प्रत्यय शप् प्रत्ययको अपवाद हो ।

**सुनोति–** सु धातुदेखि लट्, तिप्, 'सु+ति' भएपछि, "कर्तरि शप्"ले शप् प्रत्यय पायो, त्यसलाई बाधेर "स्वादिभ्यः श्नुः" ले श्नु प्रत्यय भयो "लशक्वतद्धिते"ले शकारको इत्संज्ञा र लोप भयो, 'सु+नु+ति' भयो, नुलाई "तिङ्शित्सार्वधातुकम्"ले सार्वधातुकसंज्ञा भयो, "सार्वधातुकमपित्"ले ङिद्वद्भाव भयो, सुका उकारका स्थानमा "सार्वधातुकार्धधातुकयोः"ले पाएको गुणको "क्ङिति च"ले निषेध भयो, सुनु यसलाई ति पर राखेर अङ्ग संज्ञा भएपछि सुनुका उकारका स्थानमा "सार्वधातुका०"ले गुण भयो, 'सुनोति' सिद्ध भयो । द्विवचनमा तस् ङित् हुनाले गुण हुँदैन, सुनुतः यो रूप हुन्छ ।

**सुन्वन्ति–** सु धातुदेखि लट्, झि, अन्तआदेश, श्नुप्रत्यय भएपछि, 'सुनु+अन्ति' यहाँ गुणनिषेध भयो, उवङ्लाई बाधेर "हुश्नुवोः सार्वधातुके"ले यण् भयो, 'सुन्वन्ति' सिद्ध भयो ।

सिप्, थस्, थमा सुनोषि, सुनुथः, सुनुथ यी रूप हुन्छन् । मिप्मा सुनोमि हुन्छ । वस्, मस्मा "लोपश्चास्यान्यतरस्यां०"ले वैकल्पिक उकारको लोप हुन्छ, सुन्वः/सुनुव, सुन्म/सुनुमः दुई दुई रूप हुन्छन् ।

**सुनुते–** आत्मनेपद तमा 'सुनु+ते' भएपछि नु ङित् हुनाले सुका उकारका स्थानमा गुण पाएको निषेध भयो, 'सुनु+ते' यहाँ सुनुका उकारका स्थानमा गुण पाएकोमा ते यो ङित् हुनाले पुनः निषेध भयो, 'सुनुते' सिद्ध भयो ।

**सुन्वाते–** आताम्मा 'सुनु+आते', भएपछि "हुश्नुवोः"ले यण् भयो, 'सुन्वाते' सिद्ध भयो । वहि महिमा वैकल्पिक उकार लोप हुन्छ । सुन्वहे, सुनुवहे । सुन्महे, सुनुमहे दुई दुई रूप हुन्छन् ।

**सुषाव–**सु लिट्, तिप्, णल्, द्वित्व, अभ्यासकार्य वृद्धि, आव्, षत्व भयो, 'सुषाव' सिद्ध भयो ।

**सुषुवतुः, सुषुवुः–** 'सुसु+अतुस्', 'सुसु+उस्' यहाँ "एरनेकाचः०" लाग्दैन, "ओः सुपि"ले सुपि भन्छ, अतः उवङ् भयो, 'सुषुवतुः', 'सुषुवुः' यी रूप सिद्ध भए ।

**सुषविथ/सुषोथ–** थल्मा 'सु+थ' यहाँ "एकाचः०"ले इट्निषेध भएपछि क्रादिनियमले नित्य इट् पाएकोमा भारद्वाज-नियमले वैकल्पिक इट् भयो, द्वित्वादि, गुण भयो, 'सुषविथ' सिद्ध भयो । इट् नभएको पक्षमा पनि द्वित्वादि र गुण भयो, 'सुषोथ' सिद्ध भयो ।

सुषुवे । सोता । सुनु । सुनवानि । सुनवै । सुनुयात् । सूयात् ॥

**६४६. स्तुसुधूञ्भ्यः परस्मैपदेषु ७।२।७२॥**

एभ्यः सिच इट् स्यात्परस्मैपदेषु । असावीत्,

---

**बाँकी रूप-** सुषुवथुः, सुषुव । सुषाव/सुषव, सुषुविव, सुषुविम । व ममा क्रादि नियमले नित्य इट् भयो । यस धातुमा "स्वरतिसूति०" लाग्दैन, यो सूत्रमा उल्लिखित सु धातुमध्ये यो धातु पर्दैन ।

**सुषुवे-** लिट् लकार आत्मनेपदमा सुषुवे, सुषुवाते, सुषुविरे, आदि रूप हुन्छन् से, ध्वे, वहे महेमा नित्य इट् हुन्छ ।

**लुट्मा** सोतासि, सोतासे । **लृट्मा** सोष्यति, सोष्यते ।

**लोट् परस्मैपद**-प्रथमपुरुषमा सुनोतु/सुनुतात्, सुनुताम्, सुन्वन्तु ।

**सुनु/सुनुतात्-** हिमा तातङ् नभएको पक्षमा "उतश्च प्रत्ययात्०"ले हिको लुक् भयो, 'सुनु' सिद्ध भयो । तातङ् भएको पक्षमा 'सुनुतात्' सिद्ध भयो । शेष रूप- सुनुतम्, सुनुत । सुनवानि, सुनवाव, सुनवाम, सुनुदेखि आनि, आव, आम, पर भएमा आट् पित् हुनाले गुण भयो ।

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| **लोट् आत्मनेपदमा-** | प्रथमपुरुष | सुनुताम् | सुन्वाताम् | सुन्वताम् |
| | मध्यमपुरुष | सुनुष्व | सुन्वाथाम् | सुनुध्वम् |
| | उत्तमपुरुष | सुनवै | सुनवावहै | सुनवामहै |

यहाँ 'सुनु+आ+ए', 'सुनु+ऐ', 'सुनो+ऐ', 'सुनव्+ऐ', 'सुनवै', यो प्रक्रिया विचार गर्नू ।

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| **लङ् परस्मैपद-** | प्रथमपुरुष | असुनोत् | असुनुताम् | असुन्वन् |
| | मध्यमपुरुष | असुनोः | असुनुतम् | असुनुत |
| | उत्तमपुरुष | असुनवम् | असुन्व/असुनुव | असुन्म/असुनुम । |
| **लङ् आत्मनेपद-** | प्रथमपुरुष | असुनुत | असुन्वाताम् | असुन्वत |
| | मध्यमपुरुष | असुनुथाः | असुन्वाथाम् | असुनुध्वम् |
| | उत्तमपुरुष | असुन्वि | असुन्वहि/असुनुवहि | असुन्महि/असुनुमहि |

**विधिलिङ्-** परस्मैपदमा सुनुयात्, सुनुयाताम्, सुनुयुः इत्यादि रूप हुन्छन् ।

आत्मनेपदमा सुन्वीत, सुन्वीयाताम्, सुन्वीरन् इत्यादि रूप हुन्छन् ।

**आशीर्लिङ्** परस्मैपदमा "अकृत्सार्वधातुकयोः"ले दीर्घ हुन्छ । सूयात्, सूयास्ताम्, सूयासुः इत्यादि रूप हुन्छन् ।

आत्मेपदमा सोषीष्ट, सोषीयास्ताम्, सोषीरन् आदि रूप हुन्छन् ।

**स्तुसुधूञिति-** स्तु, सु र धूञ् धातुदेखि पर रहेका सिच्को इट् आगम होस्, परस्मैपद पर भएमा ।

**असावीत्-** लुङ् परस्मैपदमा 'असु+स्+ति' यहाँ "आर्धधातुकस्येड्०"ले पाएको सिच्को इट् आगमको "एकाच् उपदेशे०"ले निषेध भयो, तव "स्तुसुधूञ्भ्यः०"ले इट् भयो, 'असु+इस्+ति', इकारको लोप, ईट्, 'असु+इस्+ईत्' "सिचि वृद्धिः परस्मैपदेषु"ले वृद्धि भयो, सकारको लोप, दीर्घ भयो, 'असावीत्' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप सिद्ध हुन्छन् ।

असोष्ट ॥ **चिञ्** चयने ॥२॥ चिनोति, चिनुते ॥

**६४७. विभाषा चेः ७।३।५८॥**

अभ्यासात्परस्य चेः कुत्वं वा स्यात्सनि लिटि च । चिकाय, चिचाय, चिक्ये,

---

| **सू लुङ् प.-** | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | असावीत् | असाविष्टाम् | असाविषुः |
| | मध्यमपुरुष | असावीः | असाविष्टम् | असाविष्ट |
| | उत्तमपुरुष | असाविषम् | असाविष्व | असाविष्म |
| **आत्मनेपदमा-** | प्रथमपुरुष | असोष्ट | असोषाताम् | असोषत |
| | मध्यमपुरुष | असोष्ठाः | असोषाथाम् | असोढ्म् |
| | उत्तमपुरुष | असोषि | असोष्वहि | असोष्महि |

लुङ् परस्मैपदमा सु धातुको "स्तुसुधूञ्भ्यः०"ले इट् हुन्छ । आत्मनेपदमा हुँदैन ।

**चिञ्** धातु जम्मा गर्नु अर्थमा छ, ञकारको इत्सञ्ज्ञा लोप हुन्छ । यो धातु उभयपदी हो । (अनिट् सकर्मक)

**लट्मा** चिनोति । चिनुते । इत्यादिं रूप हुन्छन् । सुधातुमा जस्तै प्रक्रिया हुन्छ ।

**विभाषेति-** अभ्यासदेखि पर रहेका चि धातुका चकारको कुत्व होस्, सन् र लिट् पर भएमा ।

**चिकाय-** चि लिट्, तिप्, णल्, द्वित्व, 'चि+चि+अ' यहाँ "विभाषा चेः"ले कुत्व भएर अभ्यासको चिका चकारका स्थानमा ककार का भयो, 'चिकि+अ' "अचोञ्णिति०"ले वृद्धि भयो, 'चिकै+अ' आय् आदेश भयो, 'चिकाय' सिद्ध यो । कुत्व नभएको पक्षमा पनि वृद्धि, आय् आदेश भयो, 'चिचाय' सिद्ध भयो ।

**चिक्यतुः, चिक्युः-** अतुस्, उस्मा पूर्ववत् 'चिकि+अतुस्', 'चिकि+उस्' भएपछि, कित्वात्, गुणनिषेध भयो, "एरनेकाच०"ले यण् भयो, 'चिक्यतुः', 'चिक्युः' सिद्ध भयो । कुत्व नभएको पक्षमा पनि 'चिचि+अतुस्', 'चिचि+उस्' यहाँ पूर्ववत् यण् भयो, 'चिच्यतुः' 'चिच्युः' सिद्ध भयो । अरू रूपहरू पनि पूर्ववत् प्रक्रिया सम्झेर ऊह गर्नू । कुत्व भएको पक्षका र नभएको पक्षका अलग अलग रूपहरू-

**कुत्वभएको पक्षमा -**

| **चि. लिट्-** | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | चिकाय | चिक्यतुः | चिक्युः |
| | मध्यमपुरुष | चिकयिथ/चिकेथ | चिक्यथुः | चिक्य |
| | उत्तमपुरुष | चिकाय/चिकय | चिक्यिव | चिक्यिम |

**कुत्व नभएको पक्षमा-**

| **चि. लिट्-** | | | | |
|---|---|---|---|---|
| | प्रथमपुरुष | चिचाय | चिच्यतुः | चिच्युः |
| | मध्यमपुरुष | चिचयिथ/चिचेथ | चिच्यथुः | चिच्य |
| | उत्तमपुरुष | चिचाय/चिचय | चिच्यिव | चिच्यिम |

आत्मनेपदमा कुत्व भएको पक्षमा चिक्ये, चिक्याते, चिक्यिरे आदि रूप हुन्छन् ।

चिच्ये । अचैषीत्, अचेष्ट ॥ **स्तृञ्** आच्छादने ॥३॥ स्तृणोति, स्तृणुते ॥

६४८. **शर्पूर्वाः खयः** ७।४।६१॥

अभ्यासस्य शर्पूर्वाः खयः शिष्यन्तेऽन्ये हलो लुप्यन्ते । तस्तार । तस्तरतुः । तस्तरे ।

---

कुत्व नभएको पक्षमा चिच्ये, चिच्याते, चिच्यिरे आदि रूप हुन्छन् ।

**लुट्मा** चेतासि, चेतासे आदि । **लृट्मा** चेष्यति, चेष्यते आदि । **लोट्मा** चिनोतु/चिनुतात्, चिनुताम् आदि । **लङ्मा** अचिनोत्, अचिनुत आदि । **विधिलिङ्मा** चिनुयात्, चिन्वीत आदि । **आशीर्लिङ्मा** चीयात्, चेषीष्ट आदि । **लुङ्मा** अचैषीत्, अचेष्ट आदि । **लृङ्मा** अचेष्यत्, अचेष्यत आदि रूप हुन्छन् ।

**उपसर्ग योगमा अर्थको भिन्नता-**

| | |
|---|---|
| सञ्चिनोति (जम्मा गर्छ) | निश्चिनोति (निश्चय गर्छ) |
| परिचिनोति (परिचय गर्छ) | उपचिनोति (बढ्छ, बढाउँछ) |

**स्तृञ्** धातु ढाक्नु अर्थमा छ । ञकारको इत्संज्ञा, लोप हुन्छ । यो धातु उभयपदी हो । (अनिट् सकर्मक)

लट् परस्मैपद तिप् र तस्मा स्तृणोति, स्तृणुतः यी रूप हुन्छन् । झिमा अन्त् आदेश भएपछि "हुश्नुवोः०"ले यण् हुन्छ, 'स्तृण्वन्ति' हुन्छ । र, यस्तै प्रकारले अरू रूप पनि सिद्ध गर्नू । आत्मनेपद प्रथमपुरुष एकवचनमा स्तृणुते हुन्छ । आताम्मा यण् हुन्छ र, स्तृण्वाते रूप हुन्छ । यस्तै प्रकारले पूर्ववत् अरू रूप सिद्ध गर्नू । वस्, मस्मा र वहे, महेमा वैकल्पिक उकारको लोप हुन्छ ।

**शर्पूर्वेति-** अभ्यासका शर्पूर्वमा हुने खय् शेष रहन्छन् अरू हल् लुप्त हुन्छन् ।

**तस्तार-** स्तृ लिट्, तिप्, णल् द्वित्व 'स्तृ+स्तृ+अ' यहाँ "उरत्"ले अर् भयो, 'स्तर्+स्तृ+अ' भयो, "हलादिः शेषः"ले अभ्यासमा आदि हल् सकारको शेष पाएमा बाधेर "शर्पूर्वाः खयः"ले शर् पूर्वमा हुने खय् तकारको शेष रह्यो अरू हल् (सकार र रेफ)को लोप भयो, 'त+स्तृ+अ', वृद्धि भयो, 'तस्तार' सिद्ध भयो ।

**तस्तरतुः-** पूर्ववत् 'तस्तृ+अतुस्' भएपछि कित्वात् "सार्वधातुका०"ले पाएको गुणनिषेध भएपछि "ऋतश्च संयोगादेर्गुणः"ले गुण भयो, 'तस्तरतु' सिद्ध भयो । यस्तै प्रकारले तस्तरुः आदि रूप हुन्छन् । थल्मा ऋदन्त धातु हुनाले इट्आगम हुँदैन । वममा "कृसृभृवृ"ले नित्य इट् हुन्छ । यहाँ सर्वत्र "ऋतश्च संयोगादर्गुणः"ले गुण हुन्छ । आत्मनेपद ध्वम्मा "विभाषेटः" लाग्छ ।

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| **स्तृ लिट् प-** | प्रथमपुरुष | तस्तार | तस्तरतु | तस्तरुः |
| | मध्यमपुरुष | तस्तर्थ | तस्तरथुः | तस्तर |
| | उत्तमपुरुष | तस्तार/तस्तर | तस्तरिव | तस्तरिम |
| **स्तृ लिट् आ.-** | प्रथमपुरुष | तस्तरे | तस्तराते | तस्तरिरे |
| | मध्यमपुरुष | तस्तरिषे | तस्तराथे | तस्तरिढ्वे/तस्तरिध्वे |
| | उत्तमपुरुष | तस्तरे | तस्तरिवहे | तस्तरिमहे |

**लुट्मा** स्तर्तासि, स्तर्तासे आदि । **लृट्मा** "ऋद्धनोःस्ये"ले नित्य इट् हुन्छ । स्तरिष्यति, स्तरिष्यते आदि । **लोट्मा** स्तृणोतु, स्तृणुताम् आदि । **लङ्मा** अस्तृणोत्, अस्तृणुत आदि । **विधिलिङ्मा** स्तृणुयात् स्तृण्वीत आदि रूप हुन्छन् ।

गुणोऽर्तीति गुणः । स्तर्यात् ॥

**६४९. ऋतश्च संयोगादेः ७।२।४३॥**

ऋदन्तात्संयोगादेः परयोर्लिङ्सिचोरिड्वा स्यात्तङि । स्तरिषीष्ट, स्तृषीष्ट । अस्तरिष्ट, अस्तृत ॥

---

**आशीर्लिङ्–** परस्मैपदमा "गुणोऽर्तिसंयोगाद्योः"ले गुण हुन्छ । स्तर्यात् आदि रूप हुन्छन् । आत्मनेपदमा विशेष प्रक्रिया छ ।

**ऋतश्चेति–** ह्रस्व ऋकारान्त संयोग आदिमा हुने धातुदेखि पर रहेका लिङ् र सिच्को इट् आगम विकल्पले होस् तङ् पर भएमा ।

**स्तरिषीष्ट–** आशीर्लिङ् आत्मनेपदमा 'स्तृ+षीय्+स्+त', यहाँ यकारको लोप, 'स्तृ+सीस्+त' "ऋतश्च संयोगादेः०"ले तङ् आत्मनेपद पर हुनाले संयोगादि ऋदन्त धातु स्तृदेखि पर रहेको लिङ्–'सीस्त'को वैकल्पिक इट् भयो, 'स्तृ+इसीस्त', "सार्वधातुका०ले गुण भयो, दुवै सकारको षत्व, ष्टुत्व भयो, 'स्तरिषीष्ट' सिद्ध भयो । इट् आगम नभएको पक्षमा सीस्तलाई "उश्च"ले कित्व भयो र गुणनिषेध भयो, षत्व, ष्टुत्व भयो, 'स्तृषीष्ट' सिद्ध भयो । यस्तै प्रकारले सर्वत्र दुई दुई रूप हुन्छन्–

स्तृ. आ. लि. (इट् आगम भएमा)-

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | स्तरिषीष्ट | स्तरिषीयास्ताम् | स्तरिषीरन् |
| मध्यमपुरुष | स्तरिषीष्ठाः | स्तरिषीयास्थाम् | स्तरिषीढ्वम्/स्तरिषीध्वम् |
| उत्तमपुरुष | स्तरिषीय | स्तरिषीवहि | स्तरिषीमहि |

स्तृ. आ. लि. (इट्आगम नभएमा)-

| | | | |
|---|---|---|---|
| प्रथमपुरुष | स्तृषीष्ट | स्तृषीयास्ताम् | स्तृषीरन् |
| मध्यमपुरुष | स्तृषीष्ठाः | स्तृषीयास्थाम् | स्तृषीढ्वम् |
| उत्तमपुरुष | स्तृषीय | स्तृषीवहि | स्तृषीमहि |

**लुङ्–** परस्मैपदमा अस्तार्षीत्, अस्तार्ष्टाम्, अस्तार्षुः आदि रूप हुन्छन् । आत्मनेपदमा "ऋतश्च संयोगादेः"ले वैकल्पिक इट् हुन्छ, इट् भएको पक्षमा गुण "सार्वधातुका०"ले हुन्छ, इट् नभएको पक्षमा "उश्च"ले कित्व हुन्छ गुण हुँदैन । "ह्रस्वादङ्गात्"ले सिच्को लुक् हुन्छ ।

स्तृ. लुङ् (इट्आगम भएमा)-

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अस्तरिष्ट | अस्तरिषाताम् | अस्तरिषत |
| मध्यमपुरुष | अस्तरिष्ठाः | अस्तरिषाथाम् | अस्तरिढ्वम्/अस्तरिध्वम् |
| उत्तमपुरुष | अस्तरिषि | अस्तरिष्वहि | अस्तरिष्महि |

स्तृ. लुङ् (इट्आगम नभएमा)-

| | | | |
|---|---|---|---|
| प्रथमपुरुष | अस्तृत | अस्तृषाताम् | अस्तृषत |
| मध्यमपुरुष | अस्तृथाः | अस्तृषाथाम् | अस्तृढ्वम् |
| उत्तमपुरुष | अस्तृषि | अस्तृष्वहि | अस्तृष्महि |

लृङ्मा अस्तरिष्यत्, अस्तरिष्यत आदि रूप हुन्छन् । "ऋद्धनोः स्ये"ले इट् आगम हुन्छ ।

धूञ् कम्पने ॥४॥ धूनोति, धूनुते । दुधाव । स्वरतीति वेट् । दुधविथ, दुधोथ ॥

**६५०. श्र्युकः किति ७।२।११॥**

श्रिञ एकाच उगन्ताञ्च्च गित्किततोरिण् न । परमपि स्वरत्यादिविकल्पं बाधित्वा पुरस्तात्प्रतिषेधकाण्डारम्भसामर्थ्यादनेन निषेधे प्राप्ते क्रादिनियमान्नित्यमिट् । दुधुविव ।

---

[९२] **धूञ्** धातु कँपाउनु हल्लाउनु अर्थमा छ । ञित्वाद् उभयपदी धातु हो । (वेट् सकर्मक) "स्वरतिसूति०" लाग्ने हुनाले वलादि आर्धधातुक प्रत्ययको वैकल्पिक इट् आगम हुन्छ । तर लिट्मा विशेष प्रक्रिया छ ।

**लट्मा** धूनोति, धूनुते आदि रूप हुन्छन् ।

**लिट्मा**– परस्मैपद प्रथमपुरुषमा दुधाव, दुधुवतुः, दुधुवुः यहाँ सामान्य प्रक्रिया छ । थल्मा "स्वरतिसूतिधूञूदितो वा"ले वैकल्पिक इट् आगम हुन्छ । व, म,मा नित्य इट् आगम हुन्छ ।

**दुधविथ/दुधोथ**– 'धू+थ' यहाँ "आर्धधातुकस्येड् वलादेः"ले नित्य इट् पायो, त्यसलाई बाधेर "स्वरतिसूतिधूञूदितो वा"ले वैकल्पिक इट् भयो, 'धू+इथ' द्वित्वादि 'दुधू+इथ' गुण अव् आदेश 'दुधविथ' सिद्ध भयो । इट् आगम नभएका पक्षमा पनि द्वित्वादि, गुण भयो, 'दुधोथ' सिद्ध भयो । यसरी दुई रूप भए । 'अथुस्+उस्'मा उवङ् हुन्छ, दुधुवथुः, दुधुव । णल्मा, दुधाव दुधव हुन्छ ।

**श्र्युक इति**– श्रि धातुदेखि र एकाच् उगन्त धातुदेखि पर रहेका गित् र कित् प्रत्ययको इट् आगम नहोस् ।

**परमपीति**- व, म,मा त पर भए पनि "स्वरतिसूति" आदि सूत्रले पाएको वैकल्पिक इट् आगमलाई बाधेर "श्र्युकः किति"ले निषेध पाएमा क्रादिनियमले नित्य इट् आगम हुन्छ ।

उपयुर्क्त भनाइको आशय– यद्यपि स्वरतिसूतिधूञूदितो वा ७।२।४३ श्र्युकः किति ७।२।११ भन्दा पर छ तर "श्र्युकः किति"ले "स्वरतिसूति०"लाई बाध्छ, किनभने इट्निषेध गर्ने प्रकरण इट् विधान गर्ने प्रकरणभन्दा पहिले आरम्भ गरिएको छ । जस्तै- "नेटि" ७।२।४ "ह्म्यन्तक्षण०" ७।२।५ "नेड्वशि०" ७।२।८, "एकाच उपदेशे०" ७।२।१०, "श्र्युकः किति" ७।२।११, यस्तै अरू पनि निषेध गर्ने सूत्र सबै पहिले छन् । पछिबाट इट् आगम विधान गर्ने प्रथम सूत्र "आर्धधातुकस्येड् वलादेः" ७।२।२५, "स्नुक्रमोरनात्मनेपद०" ७।२।३६, हुँदै गएर "स्वरतिसूति०" ७।२।४३ सूत्र छ । अब "विप्रतिषेधे परं कार्यम्" लगाएर निषेध सूत्रलाई विधिसूत्रले बाध्ने हो भने निषेधको अवकाश नै रहँदैन, अतः निषेधसूत्र पहिले विधान गर्नका सामर्थ्यले यहाँ "विप्रतिषेधे परं कार्यम्" लाग्दैन । प्राप्तव्यस्थलमा विधिसूत्रलाई निषेधसूत्रले बाध्छ । यहाँ पनि "स्वरतिसूति०"लाई "श्र्युकः किति"ले बाध्दछ ।

**दुधुविव/ दुधुविम**– धू धातुको लिट् लकार वस्, मस्मा 'धू+व', 'धू+म' यहाँ "आर्धधातुकस्येड्०"ले नित्य इट् पायो, त्यसलाई बाधेर "स्वरतिसूति०"ले वैकल्पिक इट् पायो, त्यसको "श्र्युकः किति"ले निषेध भएपछि, "कृसृभृवृ०" यो नियम लाएर नित्य इट् भयो, द्वित्वादि, उवङ् भयो, 'दुधुविव', 'दुधुविम' सिद्ध भयो ।

---

९२ यो धू धातु स्वादिमा ह्रस्व पनि छ । भ्वादि, तुदादि, क्र्यादि र चुरादिमा दीर्घ छ । यस धातुको लट्परस्मैपद तिप्का रूपको सङ्ग्रह निम्नलिखित श्लोकमा एक कविले गरेका छन् ।

धूनोति चम्पकवनानि धुनोत्यशोकं चूतं धूनाति धुवति स्फुटितातिमुक्तम् ।
वायुर्विधूनयति चम्पकपुष्परेणून् यत्कानने धवति चन्दनमञ्जरीश्च ॥

'धुनाति'मा "प्वादीनां ह्रस्वः"ले ह्रस्व हुन्छ । सर्वत्र कर्ता वायु हो । 'धूनयति'मा "धूञ्प्रीञोर्नुक्"ले नुक् आगम हुन्छ ।

दुधुवे । अधावीत्, अधविष्ट, अधोष्ट । अधविष्यत् । अधोष्यत् । अधविष्यताम्, अधोष्यताम् । अधविष्यन्, अधोष्यत ॥

**इति स्वादयः ॥५॥**

-------------

आत्मनेपद से, ध्वे, वहे, महे,मा पनि व, म,मा जस्तै प्रक्रिया हुन्छ ।

धू लिट् आत्मनेपद-

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | दुधुवे | दुधुवाते | दुधुविरे |
| मध्यमपुरुष | दुधुविषे | दुधुवाथे | दुधुविढ्वे/दुधुविध्वे |
| उत्तमपुरुष | दुधुवे | दुधुविवहे | दुधुविमहे |

**लुट्मा-** "श्र्युकः किति"ले इट् आगमको निषेध नहुने हुँदा "स्वरतिसूति०"ले वैकल्पिक इट् आगम हुन्छ । यस्तै लृट्मा पनि वैकल्पिक इट् आगम हुन्छ ।

**लुट्मा** धविता/धोता आदि । **लृट्मा** धविष्यति/धोष्यति, धविष्यते/धोष्यते आदि । **लोट्मा** धूनोतु, धूनुताम् आदि । **लङ्मा** अधूनोत्, अधूनुत आदि । **विधिलिङ्मा** धूनुयात् धून्वीत आदि । **आशीर्लिङ्मा** धूयात्, धविषीष्ट/धोषीष्ट आदि रूप हुन्छन्

**अधावीत्-** लुङ् परस्मैपदमा 'अधू+स्+ईत्' यहाँ "आर्धधातुकस्येड्०"लाई बाधेर "स्वरतिसूति०"ले सिच्को वैकल्पिक इट् आगम पाएमा त्यसलाई बाधेर "स्तुसुधूञ्भ्यः"ले नित्य इट् भयो, 'अधू+इस्+ईत्', "सिचि वृद्धिः परस्मैपदेषु"ले वृद्धि भयो, 'अधौ+इस्+ईत्' आव् आदेश, सकारको लोप, दीर्घ भयो, 'अधावीत्' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप सिद्ध गर्नू ।

**धू लुङ् परस्मैपद-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपरुष | अधावीत् | अधाविष्टाम् | अधाविषुः |
| मध्यमपुरुष | अधावीः | अधविष्टम् | अधाविष्ट |
| उत्तपुरुष | अधाविषम् | अधाविष्व | अधाविष्म |

आत्मनेपदमा "स्वरतिसूति"ले वैकल्पिक इट् हुन्छ । इट् भएको पक्षमा अधविष्ट, अधविषाताम्, अधविषत आदि रूप हुन्छन् । इट् नभएमा अधोष्ट, अधोषाताम्, अधोषत आदि रूप हुन्छन् ।

लृङ्मा अधविष्यत्, अधोष्यत् । अधविष्यत, अधोष्यत आदि रूप हुन्छन् ।

**स्वादिगण सकियो ।**

-------------

## अथ तुदादयः

**तुद** व्यथने ॥१॥

**६५१. तुदादिभ्यः शः ३।१।७७॥**

शपोऽपवादः । तुदति, तुदते । तुतोद । तुतोदिथ । तुतुदे ।

---

**अब तुदादिगण शुरू हुन्छ ।**

**तुद** धातु पीडा दिनु अर्थमा छ । अकार स्वरित हो, अकारको इत्संज्ञा, लोप हुन्छ । यो धातु उभयपदी, अनिट् सकर्मक हो ।

**तुद्**धातुदेखि लिप् धातुसम्मका दश धातु स्वरितेत् हुनाले उभयपदी छन् ।

**तुदादिभ्य इति–** तुदादि गण पठित धातुदेखि श प्रत्यय होस्, कर्ता अर्थमा विधान गरिएको सार्वधातुक प्रत्यय पर भएमा ।

शप् प्रत्यय र श प्रत्ययमा अनुबन्ध लोप भएपछि, अ नै बाँकी रहन्छ । तर शप् प्रत्यय पित्वात् ङित् हुँदैन । श प्रत्यय अपित् हुनाले ङित् हुन्छ । अतः शप्रत्यय पर भएमा गुणनिषेध र संप्रसारण आदि कार्य हुन्छन् । अर्को कुरा वैदिक स्वरप्रक्रियामा पनि यी दुईको उच्चारणमा फरक छ । शप् प्रत्यय अनुदात्त हुन्छ, शप्रत्यय उदात्त हुन्छ ।

**तुदति–** तुद् धातुदेखि लट्, तिप् भएपछि, 'तुद्+ति' यहाँ "कर्तरि शप्"ले शप् प्रत्यय पायो, त्यसलाई बाधेर "तुदादिभ्यःशः"ले शप्रत्यय भयो, शकारको इत्संज्ञा लोप भयो, 'तुद्+अ+ति' "पुगन्तलघूपधस्य च" गुण पाएकोमा श(अ)प्रत्यय अपित् हुनाले सार्वधातुकमपित्ले ङित् भयो र "क्ङिति च"ले गुणनिषेध भयो, 'तुदति' सिद्ध भयो । यस्तै प्रकारले तुदतः, तुदन्ति आदि रूप पनि सिद्ध हुन्छन् ।

**तुदते–** तुद् लट्, त, एत्व, शप्रत्यय, 'तुद्+अ+ते' ङित्वात्, लघुपधगुणको निषेध भयो, 'तुदते' सिद्ध भयो । यस्तै प्रकारले तुदेते, तुदन्ते आदि रूप सिद्ध हुन्छन् ।

**तुतोद–** तुद् लिट्, तिप्, णल्, द्वित्व, 'तुद्+तुद्+अ' 'तुतुद्+अ' गुण, 'तुतोद' सिद्ध भयो । यस्तै प्रकारले तुतुदतुः, तुतुदुः आदि रूप हुन्छन् । कित् विभक्तिमा गुणनिषेध हुन्छ ।

**तुतोदिथ–** 'तुद्+थ' यहाँ "आर्धधातुकस्येड०"ले पाएको इडागम "एकाच०"ले निषेध भयो, "कृसृभृवृ०" यो नियम सूत्रले नित्य इट् आगम भयो, यो अजन्त र अकारवान धातु नहुनाले "अचस्तास्वत्०" र "उपदेशेऽत्वतः" लागेनन्, नलागेपछि "ऋतो भारद्वाजस्य" पनि लागेन, 'तुद्+इथ', द्वित्वादि, गुण भयो, 'तुतोदिथ' सिद्ध भयो ।

बाँकी रूप– तुतुदथुः, तुतुद । तुतोद, तुतुदिव, तुतुदिव ।

आत्मनेपदमा पनि से, ध्वे, वहे, महे,मा पूर्ववत् नित्य इट् हुन्छ ।

**तुद् लिट्–**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | तुतुदे | तुतुदाते | तुतुदिरे |
| मध्यमपुरुष | तुतुदिषे | तुतुदाथे | तुतदिध्वे |
| उत्तमपुरुष | तुतुदे | तुतुदिवहे | तुतुदिमहे |

तोत्ता । अतौत्सीत्, अतुत्त ॥ **णुद** प्रेरणे ॥२॥ नुदति, नुदते । नुनोद । नोत्ता ॥ **भ्रस्ज** पाके ॥३॥ ग्रहिज्येति सम्प्रसारणम् । सस्य श्चुत्वेन शः । शस्य जश्त्वेन जः । भृज्जति, भृज्जते ॥

६५२. **भ्रस्जोरोपधयोरमन्यतरस्याम् ६।४।४७॥**

भ्रस्जेरेफस्योपधायाश्च स्थानेरमागमो वा स्यादार्धधातुके । मित्त्वादन्त्यादचः परः । स्थानषष्ठीनिर्देशाद्रोपधयोर्निवृत्तिः ।

---

**लुट्मा** तोत्तासि । तोत्तासे आदि । **लृट्मा** तोत्स्यति । तोत्स्यते आदि । **लोट्मा** तुदतु, तुदताम् आदि । **लङ्मा** अतुदत्, अतुदत आदि । **विधिलिङ्मा** तुदेत्, तुदेत आदि । **आशीर्लिङ्मा** तुद्यात्, तुत्सीष्ट आदि । **लुङ्मा** अतौत्सीत्, अतुत्त आदि । **लृङ्मा** अतोत्स्यत्, अतोत्स्यत आदि रूप हुन्छन् । आशीर्लिङ्को आत्मनेपदमा र लुङ्को आत्मनेपदमा "लिङ्सिचावात्मनेपदेषु"ले कित्व विधान गर्छ ।

**णुद** धातु प्रेरणा गर्नु- (अह्राउनु/खटाउनु) अर्थमा अकार स्वरित हो, इत्संज्ञा भएर लोप हुन्छ "णो नः" णकारको नकार हुन्छ नुद् धातु बन्दछ । यो धातु उभयपदी हो । (अनिट्, सकर्मक )

लट् आदि लकारमा नुदति, नुदते । नुनोद, नुनुदे । नोत्तासि, नोत्तासे । नोत्स्यति, नोत्स्यते आदि सबै रूप तुद् धातुका जस्तै हुन्छन् ।

**भ्रस्ज** धातु पकाउनु (भुट्नु) अर्थमा छ । अकार स्वरित हो इत्संज्ञा लोप हुन्छ, जकारान्त भ्रस्ज् धातु हुन्छ । (अनिट् सकर्मक )

**ग्रहिज्येति-** "ग्रहिज्यावयिव्यधि०" यस सूत्रले संप्रसारण हुन्छ । श्चुत्व भएर दन्त्य सकारको तालव्य शकार र शकारको जश्त्व भएर जकार हुन्छ ।

**भृज्जति-** भ्रस्ज लट्, तिप्, शप्लाई बाधेर शप्रत्यय 'भ्रस्ज्+अ+ति' यहाँ "सार्वधातुकमपित्" शको ङिद्वद्भाव भएपछि, "ग्रहिज्यावयिव्यधि०"ले भ्रस्जको सम्प्रसारण 'भृस्ज्+अ+ति' यहाँ भृस्का सकारको श्चुत्व भएर शकार, शकारका स्थानमा "झलां जश् झशि"ले जश्त्व भएर जकार, 'भृज्ज्+अ+ति' वर्णमेलन, 'भृज्जति' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि हुन्छन् ।

| **भ्रस्ज लट् प.-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | भृज्जति | भृज्जतः | भृज्जन्ति |
| | मध्यमपुरुष | भृज्जसि | भृज्जथः | भृज्जथ |
| | उत्तमपुरुष | भृज्जामि | भृज्जावः | भृज्जामः |

**भृज्जते-** आत्मनेपदमा पनि 'भ्रस्ज+अ+ते' भएपछि संप्रसारण, 'भृस्ज्+अ+ते', 'भृज्ज्+अ+ते' 'भृज्जते' सिद्ध भयो । यस्तै प्रकारले भृज्जेते आदि रूप पनि बन्दछन् ।

| **भ्रस्ज लट् आ.-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | भृज्जते | भृज्जेते | भृज्जन्ते |
| | मध्यमपुरुष | भृज्जसे | भृज्जेथे | भृज्जध्वे |
| | उत्तमपुरुष | भृज्जे | भृज्जावहे | भृज्जामहे |

**भ्रस्ज इति-** भ्रस्ज् धातुको रेफ र उपधाका स्थानमा रम् आगम विकल्पले होस् । आर्धधातुक प्रत्यय पर भएमा । रम्मा आगमत्व र आदेशत्व दुवै छ । यसैकुरालाई वृत्तिकारले स्पष्ट गरेका छन् ।

**स्थानषष्ठीति-** स्थानषष्ठ्यन्त पद "रोपधयोः" भनेको हुनाले रेफ र उपधाको निवृत्ति हुन्छ, यो आदेशत्व हो । आगमत्व हुनाले "मिदचोऽन्त्यात्परः" लगाएर अन्त्य अच्देखि पर रम् आगम (र्) हुन्छ ।

बभर्ज । बभर्जतुः । बभर्जिथ, बभर्ष्ठ । बभ्रज्ज । बभ्रज्जतुः । बभ्रज्जिथ । स्कोरिति सलोपः । व्रश्चेति षः । बभ्रष्ठ ।

---

**बभर्ज**– भ्रस्ज् लिट्, तिप्, णल्, 'भ्रस्ज्+अ' यहाँ "भ्रस्जो रोपधयोः०"ले आर्धधातुक प्रत्यय अ पर हुनाले भ्रस्ज् धातुको रेफ र उपधाका स्थानमा रम् आगम भयो, स्थानषष्ठचन्तपद "रोपधयोः"ले निर्देश गरेको हुनाले रेफ र उपधाको लोप भयो, भज् भयो, रम्का मकारको "हलन्त्यम्"ले अकारको "उपदेशेऽजनुनासिक०"ले इत्संज्ञा, लोप भयो 'र्' बाँकी रह्यो । "मिदचोऽन्त्यात्०" लगाएर भज् यहाँ भका अकारदेखि पर र्आगम भयो, 'भर्ज+अ' भयो, द्वित्व, अभ्यासकार्य भयो, 'बभर्ज्+अ' वर्णमेलन भयो, 'बभर्ज' सिद्ध भयो ।

**बभर्जतुः**– 'भ्रस्ज+अतुस्' यहाँ पूर्ववत् वैकल्पिक रम् आगम रेफ र उपधाको निवृत्ति, भका अकारदेखि पर रम्को 'र्' भएपछि 'भर्ज+अतुस्' भयो, द्वित्व, हलादिशेष, जश्त्व भयो, 'बभर्जतुः' सिद्ध भयो । यसैगरी बभर्जुः पनि सिद्ध हुन्छ ।

**बभर्जिथ/बभर्ष्ठ**- 'भ्रस्ज+थ' यहाँ "आर्धधातुकस्येड्०"ले इट्आगम पाएकोमा "एकाच०"ले निषेध भयो, "कृसृभृवृ०" यो नियम लाएर इट् आगम पाएको "उपदेशेऽत्वतः"ले तासि प्रत्ययमा नित्यानिट्, उपदेशमा अकारवान् धातु हुनाले निषेध भयो, "ऋतो भारद्वाजस्य" लाएर वैकल्पिक इट् भयो, 'भ्रस्ज+इथ', "भ्रस्जो रोपधयोः०"ले पूर्ववत् रम् आगम हुँदा 'भर्ज्+इथ' भयो, द्वित्वादि भयो, 'बभर्जिथ' सिद्ध भयो । इट् नभएको पक्षमा पनि वैकल्पिक रम् आगम, रेफ र उपधाको लोप, द्वित्व आदि भयो, 'बभर्ज्+थ' यहाँ "व्रश्चभ्रस्ज०"ले षत्व भयो, 'बभर्ष्+थ' "ष्टुना ष्टुः"ले ष्टुत्व भयो, 'बभर्ष्ठ' सिद्ध भयो ।

अथुस् र अमा बभर्जथुः बभर्ज, उत्तमपुरूषको णल्मा पनि वृद्धिको प्रसङ्ग छैन, अत 'बभर्ज' एउटै मात्र रूप हुन्छ । व, म,मा क्रादिनियमले नित्य इट् हुन्छ, रम् आगम र द्वित्वादि भएपछि, बभर्जिव, बभर्जिम यी रूप हुन्छन् ।

अब "भ्रस्जो रोपधयोः०"ले रम्आगम नभएको पक्षका रूपहरूको साधनप्रक्रिया देखाइन्छ ।

**बभ्रज्ज**– "भ्रस्जो रोपधयोः"ले रम् नभएको पक्षमा भ्रस्ज लिट्, तिप्, णल् 'भ्रस्ज्+अ' यहाँ द्वित्व, अभ्यासकार्य भएपछि, 'बभ्रस्ज्+अ' भयो, सकारको श्चुत्व भएर शकार, शकारको जश्त्व भएर जकार भयो, 'बभ्रज्ज' सिद्ध भयो ।

**बभ्रज्जतुः**– "भ्रस्जो०" ले रम नभएको पक्षमा 'भ्रस्ज+अतुस्' यहाँ पनि पूर्ववत् श्चुत्व जश्त्व भएर 'बभ्रज्जतुः' सिद्ध भयो । यस्तै प्रकारले 'बभ्रज्जुः' पनि सिद्ध हुन्छ । यहाँ "ग्रहिज्या०"ले सम्प्रसारण हुँदैन । किनकि अतुस्, उस् आदि संयोगदेखि पर रहेका हुनाले कित् छैनन् । "असंयोगाल्लिट् कित्" लाग्दैन, "सार्वधातुकमपित्"ले ङित्व पनि हुँदैन । लिट्का स्थानमा आदेश भएको तिङ् आर्धधातुक हुन्छ ।

**बभ्रज्जिथ**– थल्मा वैकल्पिक इट् आगम भएपछि रम् आगम नभएको पक्षमा 'भ्रस्ज्+इथ' यहाँ द्वित्वादि भएर 'बभ्रस्ज्+इथ' भयो, सकारको श्चुत्व, जश्त्व भयो, 'बभ्रज्जिथ' सिद्ध भयो ।

**स्कोरितीति**- इट् नभएको पक्षमा "सको संयोगाद्यो०"ले सकारको लोप हुन्छ । "व्रश्चभ्रस्ज०"ले षत्व हुन्छ ।

**बभ्रष्ठ**- इट् आगम नभएको पक्षमा 'भ्रस्ज्+थ' यहाँ द्वित्वादि भयो, 'बभ्रस्ज्+थ', "स्कोः संयोद्यो०"ले संयोगादि सकारको लोप भयो, 'बभ्रज्+थ' भयो, "व्रश्चभ्रस्ज०"ले षत्व भएर जकारका स्थानमा षकार भयो, 'बभ्रष्+थ', "ष्टुनाष्टुः"ले ष्टुत्व भयो, 'बभ्रष्ठ' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध हुन्छन् ।

बभर्जे, बभ्रज्जे । भर्ष्टा भ्रष्टा ।

बाँकी रूप– बभ्रज्जथुः, बभ्रज्ज । बभ्रज्ज, बभ्रज्जिव, बभ्रज्जिम्म ।

**बभर्जे/बभ्रज्जे**– आत्मनेपदमा 'भ्रस्ज्+ए' यहाँ रम् आगम पूर्ववत् भयो, 'भर्ज्+ए' द्वित्वादि भयो, 'बभर्जे' सिद्ध भयो । रम् आगम नभएको पक्षमा 'भ्रस्ज+ए' यहाँ भ्रस्ज्को द्वत्वादि भयो, 'बभ्रस्ज+ए' श्चुत्व, जश्त्व भयो, 'बभ्रज्जे' सिद्ध भयो ।

से, ध्वे, वहे, महे,मा क्रादिनियमले नित्य इट् हुन्छ ।

भ्रस्ज् लिट् आत्मनेपद (रम् आगम भएको पक्षमा)-

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | बमर्जे | बभर्जाते | बभर्जिरे |
| मध्यमपुरुष | बभर्जिषे | बभर्जाथे | बभर्जिध्वे |
| उत्तमपुरुष | बभर्जे | बभर्जिवहे | बभर्जिमहे |

भ्रस्ज् लिट् आत्मनेपद (रम् आगम नभएको पक्षमा)-

| | | | |
|---|---|---|---|
| प्रथमपुरुष | बभ्रज्जे | बभ्रज्जाते | बभ्रज्जिरे |
| मध्यमपुरुष | बभ्रज्जिषे | बभ्रज्जाथे | बभ्रज्जिध्वे |
| उत्तमपुरुष | बभ्रज्जे | बभ्रज्जिवहे | बभ्रज्जिमहे |

यसैगरी सबै आर्धधातुक लकारमा चार-चारथरी रूप हुन्छन् । तर आशीर्लिङ् परस्मैपदमा एकथरी रूप मात्र हुने हुँदा तीनथरी रूप हुन्छन् ।

१) लुट् परस्मैपद रम् आगम भएको पक्षमा-

**भर्ष्टा**– 'भ्रस्ज्+तास्+आ' यहाँ पूर्ववत् प्रक्रिया भएर 'भ्रस्ज्+ता' भएपछि रेफ र उपधाकास्थानमा वैकल्पिक रम् आगम 'भर्ज्+ता', "व्रश्चभ्रस्ज०"ले षत्व, ष्टुत्व, 'भर्ष्टा' एवं भर्ष्टारौ, भ्रष्टारः आदि रूप हुन्छन् ।

२) रम् आगम नभएको पक्षमा-

**भ्रष्टा**– पूर्ववत् 'भ्रस्ज्+ता' यहाँ "स्कोः संयोगाद्योः"ले सकारको लोप 'भ्रज्+ता', "व्रश्चभ्रस्ज०"ले षत्व, 'भ्रष्+ता', ष्टुत्व, 'भ्रष्टा' सिद्ध भयो । यस्तै प्रकारले भ्रष्टारौ, भ्रष्टारः आदि रूप सिद्ध हुन्छन् । दुवै थरी रूप तल दिइन्छ ।

भ्रस्ज् लिट् परस्मैपद (रम् आगम भएको पक्षमा)-

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | भर्ष्टा | भर्ष्टारौ | भर्ष्टारः |
| मध्यमपुरुष | भर्ष्टासे | भर्ष्टासाथे | भर्ष्टाध्वे |
| उत्तमपुरुष | भर्ष्टाहे | भर्ष्टास्वहे | भर्ष्टास्महे |

भ्रस्ज् लिट् परस्मैपद (रम् आगम नभएको पक्षमा)-

| | | | |
|---|---|---|---|
| प्रथमपुरुष | भ्रष्टा | भ्रष्टारौ | भ्रष्टारः |
| मध्यमपुरुष | भ्रष्टासे | भ्रष्टासाथे | भ्रष्टाध्वे |
| उत्तमपुरुष | भ्रष्टाहे | भ्रष्टास्वहे | भ्रष्टास्महे |

लृट्मा पनि परस्मैपदमा रम् आगम नभएको पक्ष र भएको पक्षमा गरी दुई थरी रूप र

भर्क्ष्यति, भ्रक्ष्यति । **वा.**(क्ङितिरमागमं बाधित्वा सम्प्रसारणं पूर्वविप्रतिषेधेन ।) भृज्ज्यात् । भृज्ज्यास्ताम् । भृज्ज्यासुः । भर्क्षीष्ट,

---

आत्मनेपदमा पनि रम् आगम भएको पक्षमा नभएको पक्षमा गरी दुई थरी रूप हुन्छन् ।

**लृट्**– परस्मैपद रम् आगम भएको पक्षमा-

**भर्क्ष्यति**– 'भर्ज्+स्यति' यहाँ "व्रश्चभ्रस्ज०"ले षत्व, "षढोः कःसि" कत्व, षत्व, क्षत्व भयो, 'भर्क्ष्यति' सिद्ध भयो । यस्तै प्रकारले भर्क्ष्यतः, भर्क्ष्यन्ति आदि रूप हुन्छन् ।

रम् आगम नभएको पक्षमा–

**भ्रक्ष्यति**– 'भ्रस्ज+स्यति', यहाँ "संयोगादिलोप" 'भ्रज्+स्य+ति', "व्रश्चभ्रस्ज०"ले षत्व, कत्व, षत्व, क्षत्व भयो, 'भ्रक्ष्यति' सिद्ध भयो । यस्तै प्रकारले भ्रक्ष्यतः, भ्रक्ष्यन्ति आदि रूप हुन्छन् ।

आत्मनेपदमा रम् आगम भएको पक्षमा-

**भर्क्ष्यते**– 'भर्ज्+स्यते' यहाँ पूर्ववत् षत्व, कत्व, षत्व, क्षत्व भयो, 'भर्क्ष्यते' सिद्ध भयो । यस्तै प्रकारले भर्क्ष्येते, भर्क्ष्यन्ते आदि रूप हुन्छन् ।

रम् आगम नभएको पक्षमा-

**भ्रक्ष्यते**– 'भ्रस्ज्+स्यते', यहाँ संयोगादि सलोप, षत्व, कत्व, षत्व, क्षत्व भयो, 'भ्रक्ष्यते' सिद्ध भयो । यस्तै प्रकारले भ्रक्ष्येते, भ्रक्ष्यन्ते आदि रूप हुन्छन् ।

**लोट्मा**– श पर भएमा संप्रसारण हुन्छ । परस्मैपदमा भृज्जतु/भृज्जतात्, भृज्जताम् भृज्जन्तु आदि रूप र आत्मनेपदमा भृज्जताम्, भृज्जेताम्, भृज्जन्ताम् आदि रूप हुन्छन् ।

**लङ्मा**– पनि श पर भएमा सम्प्रसारण हुन्छ परस्मैपदमा अभृज्जत्, अभृज्जताम् आदि रूप, आत्मनेपदमा अभृज्जत, अभृज्जेताम् आदि रूप हुन्छन् ।

**विधिलिङ्मा**– परस्मैपदमा भृज्जेत्, भृज्जेताम्, भृज्जेयुः आदि र आत्मनेपदमा भृज्जेत भृज्जेयाताम्, भृज्जेरन् आदि रूप हुन्छन् ।

(**वा.**) **क्ङितीति**– कित् ङित् आर्धधातुक प्रत्यय पर भएमा रम् आगमलाई बाधेर पूर्वविप्रतिषेधले सम्प्रसारण हुन्छ ।

आशीर्लिङ् परस्मैपदमा-**भृज्ज्यात्**– 'भ्रस्ज्+यास्+त्' यहाँ यासुट् कित् पनि छ, ङित् पनि छ र त्यो पर भएमा "भ्रस्जो रोपधयोः०"ले रम् र "ग्रहिज्यावयि०"ले संप्रसारण पनि पाएकोमा "विप्रतिषेधे परं कार्यम् लाएर रम् आगम पाएकोमा "क्ङिति रमागमं बाधित्वा"०। यो वार्तिकले रम् आगमलाई बाधेर संप्रसारण भयो, 'भृस्ज्+यास्+त्' सकारको श्चुत्व र जश्त्व भयो, 'भृज्ज्यास्त्' यहाँ "स्को संयोगाद्योः०"ले सकारको लोप भयो, 'भृज्ज्यात्' सिद्ध भयो ।

**भृज्ज्यास्ताम्**– यहाँ पनि पूर्ववत् रम् आगमलाई बाधेर संप्रसारण भयो, 'भृस्ज्+यास्+ताम्', श्चुत्व, जश्त्व, 'भृज्ज्यास्ताम्' सिद्ध भयो । यस्तै प्रकारले झिमा 'भृज्ज्यासुः' सिद्ध हुन्छ ।

**भृज्ज्याः**– सिप्मा पूर्ववत् 'भृज्ज्यास्स्' भएपछि, संयोगादि सकारको लोप, रुत्व, विसर्ग भयो, 'भृज्ज्याः' सिद्ध भयो ।

बाँकी रूप– भृज्ज्यास्तम्, भृज्यास्त । भृज्जयासम्, भृज्ज्यास्व, भृज्ज्यास्म ।

आशीर्लिङ् आत्मनेपदमा– वैकल्पिक रम् आगम हुन्छ, सीयुट् कित् ङित् छैन, संप्रसारण पाउँदैन ।

**भर्क्षीष्ट**– 'भ्रस्ज्+सीस्त्' यहाँ "भ्रस्जो रोपधयोः"ले रम् आगम भयो, 'भर्ज्+सीस्त्' "व्रश्चभस्ज०"ले षत्व, "षढोः कः सि"ले कत्व "आदेशप्रत्यययोः"ले दुवै सकारको षत्व तकारको ष्टुत्व 'भर्क्+षीष्ट' कष संयोग भएर क्षत्व भयो, 'भर्क्षीष्ट' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि हुन्छन् ।

---

भ्रक्षीष्ट । अभार्क्षीत्, अभ्राक्षीत् । अभर्ष्ट,

भ्रस्ज आशीलिङ् आत्मनेपद (रम् आगम भएको पक्षमा)

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | भर्क्षीष्ट | भर्क्षीयास्ताम् | भर्क्षीरन् |
| मध्यमपुरुष | भर्क्षीष्ठाः | भर्क्षीयास्थाम् | भर्क्षीध्वम् |
| उत्तमपुरुष | भर्क्षीय | भर्क्षीवहि | भर्क्षीमहि |

**भ्रक्षीष्ट**– रम् आगम नभएको पक्षमा 'भ्रस्ज+सीस्त' यहाँ सकारको संयोगादि लोप भयो, "व्रश्चभ्रस्ज०"ले षत्व भयो, 'भ्रष्+सीस्त' "षढोः कः सि"ले षकारको कत्व "आदेशप्रत्ययोः"ले दुवै दन्त्य सकारको षत्व, ष्टुत्व पल्लो षकारको कत्व, ककार षकार संयोग भएर क्षत्व भयो, 'भ्रक्षीष्ट' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध हुन्छन् ।

भ्रस्ज आशीर्लिङ् आत्मनेपद (रम् आगम नभएको पक्षमा)

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | भ्रक्षीष्ट | भ्रक्षीयास्ताम् | भ्रक्षीरन् |
| मध्यमपुरुक्ष | भ्रक्षीष्ठाः | भ्रक्षीयास्थाम् | भ्रक्षीध्वम् |
| उत्तमपुरुष | भ्रक्षीय | भ्रक्षीवहि | भ्रक्षीमहि |

भ्रस्ज् लुङ् परस्मैपद– **अभार्क्षीत्**– 'अभ्रस्ज्+स्+ईत्' यहाँ पूर्ववत् रम् आगम भयो, 'अभर्ज्+स्+ईत्' "वदव्रज हलन्तस्याचः"ले वृद्धि भयो, 'अभार्ज्+स्+ईत्' यहाँ षत्व, कत्व, सिच्का सकारको षत्व, ककार षकारको संयोग क्षत्व भयो, 'अभार्क्षीत्' सिद्ध भयो ।

**आभार्ष्टाम्**– 'अभ्रस्ज्+स्+ताम्' रम् आगम 'अभर्ज्+स्+ताम्' वृद्धिं, सिच्लोप, 'अभार्ज्+ताम्' षत्व, ष्टुत्व भयो, 'अभार्ष्टाम्' सिद्ध भयो । यस्तै प्रकारले तम्, तमा सिज्लोप हुन्छ । अरू विभक्तिमा षत्व, कत्व, षत्व, क्षत्व हुन्छ ।

भ्रस्ज लुङ् परस्मैपद (रम् आगम भएको पक्षमा)

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | अभार्क्षीत् | अभार्ष्टाम् | अभार्क्षुः |
| मध्यमपुरुष | अभार्क्षीः | अभार्ष्टम् | अभार्ष्ट |
| उत्तमपुरुष | अभार्क्षम् | अभार्क्ष्व | अभार्क्ष्म |

**अभ्राक्षीत्**– रम् नभएको पक्षमा 'अभ्रस्ज्+स्+ईत्', संयोगादि सलोप भएपछि, "वदव्रज०"ले वृद्धि भयो, पूर्ववत् षत्व, कत्व, षत्व, क्षत्व भयो, 'अभ्राक्षीत्' सिद्ध भयो । यस्तै प्रकारले सिच्का सकारको 'अभ्रांष्टाम्' आदि रूप पनि हुन्छन् ।

भ्रस्ज लुङ् परस्मैपद (रम् आगम नभएको पक्षमा)

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | अभ्राक्षीत् | अभ्राष्टाम् | अभ्राक्षुः |
| मध्यमपुरुष | अभ्राक्षीः | अभ्राष्टम् | अभ्राष्ट |
| उत्तमपुरुष | अभ्राक्षम् | अभ्राक्ष्व | अभ्राक्ष्म |

**अभर्ष्ट**-लुङ् आत्मनेपद– 'अभ्रस्ज्+स्+त' यहाँ रम्आगम भयो, 'अभर्ज्+स्+त' सिच्का

अभ्रष्ट ॥ **कृष** विलेखने ॥४॥ कृषति, कृषते । चकर्ष, (**वा.** ऋदुपधेभ्यो लिटः कित्वं गुणात् पूर्वविप्रतिषेधेन । चकृषतुः) चकृषे ॥

---

सकारको "झलो झलि"ले लोप, जकारको षत्व, ष्टुत्व भयो, 'अभर्ष्ट' सिद्ध भयो । यस्तै प्रकारले थास्मा पनि "झलो झलि"ले सकारको लोप हुन्छ र षत्व, ष्टुत्व हुन्छ, ध्वम्मा सकारको लोप भएपछि षत्व, जश्त्व, ष्टुत्व हुन्छ । अन्यत्र सकारको लोप षत्व, कत्व, षत्व, क्षत्व हुन्छ ।

भ्रस्ज लुङ् आत्मनेपद (रम् आगम भएको पक्षमा)

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अभर्ष्ट | अभर्क्षाताम् | अभर्क्षत |
| मध्यमपुरुष | अभर्ष्ठाः | अभर्क्षाथाम् | अभर्ड्ढ्वम् |
| उत्तमपुरुष | अभर्क्षि | अभर्क्ष्वहि | अभर्क्ष्महि |

**अभ्रष्ट**– रम् आगम नभएका पक्षमा 'अभ्रस्ज्+स्त' यहाँ भ्रस्ज्का सकारको संयोगादि लोप, सिच्का सकारको "झलो झलि"ले लोप 'अभ्रज्+त' षत्व, ष्टुत्व भयो, 'अभ्रष्ट' सिद्ध भयो । थास् र ध्वम्मा पूर्ववत् ऊह गर्नू ।

**अभ्रक्षाताम्**– 'अभ्रस्ज्+स्+आताम्' संयोगादि लोप, षत्व, कत्व, षत्व, क्षत्व भयो, 'अभ्रक्षाताम्' सिद्ध भयो । अन्यत्र पूर्ववत् ऊह गर्नू ।

भ्रस्ज लुङ् आत्मनेपद (रम् आगम नभएको पक्षमा)

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अभ्रष्ट | अभ्रक्षाताम् | अभ्रक्षत |
| मध्यमपुरुष | अभ्रष्ठाः | अभ्रक्षाक्षाम् | अभ्रड्ढ्वम |
| उत्तमपुरुष | अभ्रक्षि | अभ्रक्ष्वहि | अभ्रक्ष्महि |

**लृङ्मा**– अभर्क्ष्यत्, अभ्रक्ष्यत् । अभर्क्ष्यत, अभ्रक्ष्यत ।

**कृष** धातु जोत्नु अर्थमा छ । अकारको इत्संज्ञा, लोप हुन्छ, स्वरितेत् हुनाले यो धातु उभयपदी हो । (अनिट् सकर्मक)

**कृषति**– कृष् लट्, तिप्, श 'कृष्+अति', ङित्वाद्, लघूपधगुणको निषेध भयो, 'कृषति' सिद्ध भयो । यस्तै प्रकारले कृषतः आदि रूप हुन्छन् ।

| कृष् लट् प.- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | कृषति | कृषतः | कृषन्ति |
| | मध्यमपुरुष | कृषसि | कृषथः | कृषथ |
| | उत्तमपुरुष | कृषामि | कृषावः | कृषामः |

आत्मनेपदमा यस्तै प्रकारले कृषते, कृषेते, कृषन्ते आदि रूप पूर्ववत् ऊह गर्नू ।

**चकर्ष**– कृष लिट्, तिप्, णल्, 'कृष्+अ' द्वित्व, "उरत्"ले अर्, 'कर्षकृष्+अ' हलादिशेष चुत्व 'चकृष्+अ' लघूपधगुण भयो, 'चकर्ष' सिद्ध भयो ।

**(वा.) ऋदुपधे इति**– ऋकार उपधामा हुने धातुको गुण भन्दा पूर्वको विप्रतिषेधले कित्व हुन्छ ।

**चकृषतुः**– 'चकृष्+अतुस्' भएपछि "असंयोगाल्लिट् कित्"ले अतुस्को कित्व पनि पायो, "पुगन्तलघूपधस्य च" गुण पनि पायो, परत्वाद् गुण पाएमा "ऋदुपधेभ्यः०"ले पूर्वविप्रतिषेधले कित्व नै भयो, कित्वाद् गुणनिषेध भयो, 'चकृषतुः' सिद्ध भयो ।

---

**६५३. अनुदात्तस्य चर्दुपधस्यान्यतरस्याम् ६।१।५९॥**
उपदेशेऽनुदात्तो यऋदुपधस्तस्याम्वा स्याज्झलादावकिति । क्रष्टा, कर्ष्टा । कृक्षीष्ट ।

यहाँ विचार गर्नुपर्ने कुरा- गुण हुँदा अर् गुण हुन्छ, तब संयोगदेखि पर हुनाले कित्व पाउँदैन । थल्मा गुण गरेपछि अकारवान् भएपनि उपदेशमा अकारवान् धातु नहुनाले "उपदेशेऽत्वतः" यो सूत्र लाग्दैन र "कृसृभृवृ०"ले नै नित्य इट् हुन्छ । वस्, मस्,मा नित्य इट् हुन्छ ।

| **कृष् लिट् पर.-** **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | चकर्ष | चकृषतुः | चकृषुः |
| मध्यमपुरुष | चकर्षिथ | चकृषथुः | चकृष |
| उत्तमपुरुष | चकर्ष | चकृषिव | चकृषिम |

आत्मनेपदमा "ऋदुपधे०"ले कित्व पहिले हुन्छ र गुण हुँदैन, से, ध्वे, वहे, महे,मा "कृसृभृवृ०"ले नित्य इट् हुन्छ ।

| **कृष् लिट् आ.-** **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | चकृषे | चकृषाते | चकृषिरे |
| मध्यमपुरुष | चकृषिषे | चकृषाथे | चकृषिध्वे |
| उत्तमपुरुष | चकृषे | चकृषिवहे | चकृषिमहे |

**अनुदातस्येति**– उपदेशमा अनुदात्त जो ह्रस्व ऋकार उपधामा हुने धातु छ, त्यसको अम् आगम विकल्पले होस्, झल् आदिमा हुने कित् भिन्न प्रत्यय पर भएमा ।

**क्रष्टा**– कृष् धातुदेखि लुट्, तिप्, तासि प्रत्यय, इट् आगमको निषेध, 'कृष्+तास्+ति', यहाँ "अनुदात्तस्य चर्दुपधस्य०"ले अम्आगम भयो, अन्त्यअचदेखि पर हुँदा 'कृ+अष्+तास्+ति' भयो, यण्, 'क्रष्+तास्+ति' डा, आदेश, टिलोप, ष्टुत्व भयो, 'क्रष्टा' सिद्ध भयो । यस्तै किसिमले क्रष्टारौ, क्रष्टार आदि रूप अम् आगम भएमा हुन्छन् ।

**कर्ष्टा**– 'कृष्+तास्+ति' यहाँ अम् आगम नभएको पक्षमा लघूपध गुण भयो, 'कर्ष्+तास्+ति' डा, टिलोप भयो, 'कर्ष्+ता', ष्टुत्व भयो, 'कर्ष्टा' सिद्ध भयो । यस्तै प्रकारले कर्ष्टारौ, कर्ष्टारः इत्यादि रूप ऊह गर्नू ।

आत्मनेपदमा प्रथमपुरूषमा समान रूप नै हुन्छन् । थास्मा क्रष्टासे, कर्ष्टासे यी दुई रूप हुन्छन् । यसैगरी आथाम् आदि विभक्तिमा पनि दुई थरी रूप ऊह गर्नू ।

**लृट्** परस्मैपदमा क्रक्ष्यति, कर्क्ष्यति आदि । **आत्मनेपदमा** क्रक्ष्यते कर्क्ष्यते आदि । **लोट्मा** परस्मैपदमा कृषतु/कृषतात् आदि । **आत्मनेपदमा** कृषताम् आदि । **लङ्** परस्मैपदमा अकृषत् आदि । **आत्मनेपदमा** अकृषत आदि । **विधिलिङ्मा** कृषेत्, कृषेत आदि । **आशीर्लिङ्** परस्मैपदमा कृष्यात् आदि रूप हुन्छन् । **आशीर्लिङ्** आत्मनेपदमा "लिङ् सिचावात्मनेपदेषु" ले लिङ् कित् हुने हुनाले अम् आगम हुँदैन ।

**कृक्षीष्ट**– कृष् आशीर्लिङ् 'कृष्+सीस्त' यहाँ सीयुट् कित् हुनाले लघूपधगुण भएन, "षढोः कः सि"ले षकारको कत्व भयो, सिस्त यहाँ दुवै षकारको "आदेश प्रत्यययोः"ले षत्व भयो, ष्टुत्व भयो, ककार षकार मिलेर क्षकार भयो, 'कृक्षीष्ट' सिद्ध भयो । यस्तै प्रकारले कृक्षीयास्ताम् इत्यादि रूप हुन्छन् ।

**वा.** (स्पृशमृशकृषतृपदृपां च्लेः सिज्वा वाच्यः) । अक्राक्षीत्, अकार्क्षीत्, अकृक्षत् ।

**कृष् आ.लि. आ.-**

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | कृक्षीष्ट | कृक्षीयास्ताम् | कृक्षीरन् |
| मध्यमपुरुष | कृक्षीष्ठाः | कृक्षीयास्थाम् | कृक्षीध्वम् |
| उत्तमपुरुष | कृक्षीय | कृक्षीवहि | कृक्षीमहि |

**स्पृशमृशेति**– स्पृश, मृश, कृष, तृप, दृप धातुदेखि पर रहेका च्लिका स्थानमा सिच् विकल्पले होस् भन्नू ।

**अक्राक्षीत्**– लुङ् परस्मैपदमा कृष लुङ्, 'कृष्+ल', अट् आगम 'अकृष्+ल्' तिप्, च्लि प्रत्यय 'अकृष्+च्लि+ति', यहाँ च्लिका स्थानमा "च्ले सिच्"ले सिच् पायो, त्यसलाई बाधेर "शल इगुपधादनिटः"ले क्स प्रत्यय पायो, त्यसलाई बाधेर "स्पृशमृशकृष०" यो वार्तिकले वैकल्पिक सिच् भयो, 'अकृष्+स्+ति' सिच्को इट् आगमको निषेध, तिका इकारको लोप, ईट्, 'अकृष्+स्+ईत्' "अनुदात्तस्यच"ले अम् आगम, यण्, 'अक्रष्+स्+ईत्', "वदव्रज०"ले वृद्धि 'अक्राष्+स्+ईत्', "षढोः कः सि"ले कत्व, षत्व, क्षत्व भयो, 'अक्राक्षीत्' सिद्ध भयो । यस्तै प्रकारले सिच् भएको र अम् आगम पनि भएको पक्षमा रूप हुन्छन् । ताम्, तम्, त,मा "झलो झलि"ले सकारको लोप हुन्छ ।

कृष् लुङ् परस्मैपद (**सिच् भएमा रम्** आगम भएको पक्ष )

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | अक्राक्षीत् | अक्राष्टाम् | अक्राक्षुः |
| मध्यमपुरुष | अक्राक्षीः | अक्राष्टाम् | अक्राष्ट |
| उत्तमपुरुष | अक्राक्षम् | अक्राक्ष्व | अक्राक्ष्म |

**अकार्क्षीत्**– अम् आगम नभएको पक्षमा 'अकृष्+स्+ईत्', यहाँ "वद व्रज०"ले आर् वृद्धि भयो, 'अकार्ष्+स्+ईत्', कत्व, षत्व, क्षत्व भयो, 'अकार्क्षीत्' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि हुन्छन् । ताम्, तम्, त,मा "झलो झलि" लाग्छ, सकारको लोप हुन्छ ।

कृष् लुङ् परस्मैपद (सिच् भएमा रम् आगम नभएको पक्ष )

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | अकार्क्षीत् | अकार्ष्टाम् | अकार्क्षुः |
| मध्यमपुरुष | अकार्क्षीः | अकार्ष्टम् | अकार्ष्ट |
| उत्तमपुरुष | अकार्क्षम् | अकार्क्ष्व | अकार्क्ष्म |

**अकृक्षत्**– लुङ्मा च्लिका स्थानमा सिच् नभएको पक्षमा 'अकृष्+च्लि+ति', यहाँ च्लिका स्थानमा "शल इगुपधादनिटः०"ले क्स भयो, 'अकृष्+स+ति', तिका इकारको लोप, 'अकृष्+स+त्', कत्व षत्व, क्षत्व भयो, 'अकृक्षत्' सिद्ध भयो । यस्तै प्रकारले अकृक्षताम् आदि रूप हुन्छन् ।

कृष् लुङ् परस्मैपद (क्स प्रत्यय भएको पक्ष )

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | अकृक्षत् | अकृक्षताम् | अकृक्षन् |
| मध्यमपुरुष | अकृक्षः | अकृक्षतम् | अकृक्षत |
| उत्तमपुरुष | अकृक्षम् | अकृक्षाव | अकृक्षाम |

अकृष्ट । अकृक्षाताम् । अकृक्षत । क्सपक्षे-अकृक्षत । अकृक्षाताम् । अकृक्षन्त ॥ **मिल संगमे** ॥५॥ मिलति, मिलते । मिमेल । मेलिता । अमेलीत् ॥

---

**आत्मनेपद- कृष लुङ् सिच् पक्षमा**

**अकृष्ट-** । 'अकृष्+च्लि+त', यहाँ पूर्ववत् "शल् इगुपधात्०"लाई बाधेर "स्पृशमृश०"ले वैकल्पिक सिच् भयो, सिच्को इट्निषेध भयो, 'अकृष्+स्+त', यहाँ "झलो झलि"ले सकारको लोप भयो, ष्टुत्व भयो, 'अकृष्ट' सिद्ध भयो ।

**अकृक्षाताम्-** 'अकृष्+च्लि+आताम्', यहाँ पूर्ववत् वैकल्पिक सिच् भयो, कत्व, षत्व, क्षत्व भयो, 'अकृक्षाताम्' सिद्ध भयो ।

**अकृक्षत-** 'अकृष्+च्लि+झ', यहाँ पूर्ववत् वैकल्पिक सिच् भयो, 'अकृष्+स+झ' "आत्मनेपदष्वनतः"ले झका स्थानमा अत् 'अकृष्+स्', अत, कत्व, षत्व, क्षत्व भयो, 'अकृक्षत' सिद्ध भयो । अरू रूप पनि यस्तै प्रकारले सिद्ध हुन्छन् ।

बाँकी रूप- अकृष्ठाः, अकृक्षाथाम्, अकृड्ढ्वम् । अकृक्षि, अकृक्ष्वहि, अकृक्ष्महि । यहाँ "लिङ्सिचावात्मनेपदेषु"ले सिच्, कित् हुन्छ र अकिति भनेकोले "अनुदात्तस्य चर्दु०" लाग्दैन ।

**सिच् नभएको पक्षमा-**

**अकृक्षत-** सिच् नभएको पक्षमा 'अकृष्+च्लि+त', यहाँ "शल इगुपधात्०"ले च्लिका स्थानमा क्स भयो, 'अकृष्+स+त', कत्व, षत्व, क्षत्व भयो । 'अकृक्षत' सिद्ध भयो ।

**अकृक्षेताम्-** 'अकृष्+च्लि+आताम्' यहाँ सिच् अभाव पक्षमा क्स, 'अकृष्+स+आताम्', "**क्सस्याचि**"ले अकारको लोप भयो, कत्व, षत्व, क्षत्व भयो, 'अकृक्षाताम्' सिद्ध भयो ।

**अकृक्षन्त-** 'अकृष्+च्लि+झ', यहाँ च्लिका स्थानमा क्स भयो, 'अकृष्+स+झ', "झोऽन्तः"ले अन्त आदेश 'अकृष्+स+अन्त' "क्सस्याचि"ले अकारको लोप कत्व, षत्व, क्षत्व भयो, 'अकृक्षन्त' सिद्ध भयो । सिच् पक्षमा अकारदेखि पर नहुनाले झका स्थानमा अत् भयो । यहाँ क्सको अकारदेखि पर हुनाले "आत्मनेपदेष्वनतः" लागेन, "झोऽन्तः"ले अन्त् आदेश भयो । यस्तै प्रकारले अरू रूप जान्नू ।

**कृष. लुङ् आत्मनेपद** (क्स भएको पक्षमा)-

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अकृक्षत | अकृक्षाताम् | अकृक्षन्त |
| मध्यमपुरुष | अकृक्षथाः | अकृक्षाथाम् | अकृक्षध्वम् |
| उत्तमपुरुष | अकृक्षि | अकृक्षावहि | अकृक्षामहि |

**लृङ्** परस्मैपदमा अक्रक्ष्यत्, अकर्क्ष्यत् । आत्मनेपदमा अक्रक्ष्यत, अकर्क्ष्यत ।

उपसर्गयोगमा अर्थको भिन्नता-

आकृषति (खिच्छ) — विकृषति (हटाउँछ, टाढा पुऱ्याउँछ)

निष्कृषति (निष्कर्ष निकाल्छ) — उत्कृषति (बढाउँछ, माथि लैजान्छ)

**मिल** धातु मिल्नु अर्थमा छ । यो धातु स्वरितेत् उभयपदी हो ।(सेट अकर्मक )

**लट्** मिलति, मिलते आदि । **लिट्** मिमेल, मिमिले आदि । **लुट्** मेलितासि, मेलितासे आदि । **लृट्** मेलिष्यति, मेलिष्यते आदि । **लङ्** अमिलत्, अमिलत आदि । **विधिलिङ्** मिलेत्, मिलेत आदि । **आशीर्लिङ्** मिल्यात्, मेलिषीष्ट आदि । **लुङ्** अमेलीत्, अमेलिष्ट आदि । **लृङ्** अमेलिष्यत्, अमेलिष्यत आदि रूपहरू जान्नू ।

**मुच्लृ** मोचने ॥६॥

**६५४. शे मुचादीनाम् ७।१।५९॥**

मुच्लिप्विद्लुप्सिच्कृत्खिद्पिशां नुम् स्यात् शे परे । मुञ्चति, मुञ्चते । **मोक्ता** मुच्यात् । मुक्षीष्ट ।

---

**मुच्लृ** धातु फुकाउनु, छोड्नु अर्थमा छ । लृ स्वरित हो इत्संज्ञा लोप हुन्छ । यो धातु उभयपदी हो । (अनिट् सकर्मक )

**शे इति**– मुच्, लिप्, विद्, लुप्, सिच्, कृत्, खिद् पिश् यी धातुको श प्रत्यय पर भएमा नुम्आगम होस् ।

**मुञ्चति**– मुच् धातुदेखि लट्, तिप्, श भयो, 'मुच्+अति', यहाँ "शे मुचादीनाम्"ले नुम् आगम भयो, "मिदचोऽन्त्यात्०" लगाएर उकारदेखि पर नकार भयो, अनुस्वार परसवर्ण भयो, 'मुञ्चति' सिद्ध भयो । यस्तै प्रकारले मुञ्चतः आदि रूप जान्नु ।

| **मुच् लट् पर.**– | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | मुञ्चति | मुञ्चतः | मुञ्चन्ति |
| | मध्यमपुरुष | मुञ्चसि | मुञ्चथः | मुञ्चथ |
| | उत्तमपुरुष | मुञ्चामि | मुञ्चावः | मुञ्चामः |

**मुञ्चते**– मुच् लट्, आत्मनेपद त, एत्व, श 'मुच+अ+ते', "शे मुचादीनाम"ले नुमआगम, अनुस्वार, परसवर्ण भयो, 'मुञ्चते' सिद्ध भयो । यस्तै प्रकारले मुञ्चेते, मुञ्चन्ते आदि रूप हुन्छन् ।

| **मुच् लट् आ.**– | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | मुञ्चते | मुञ्चेते | मुञ्चन्ते |
| | मध्यमपुरुष | मुञ्चसे | मुञ्चेथे | मुञ्चध्वे |
| | उत्तमपुरुष | मुञ्चे | मुञ्चावहे | मुञ्चामहे |

**लिट्मा**– मुच् धातु अजन्त र अकारवान् नहुनाले थल्मा क्रादिनियमले नित्य इट्आगम हुन्छ र अन्यत्र पनि नित्य इट् आगम हुन्छ ।

| **मुच् लिट् पर.**– | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | मुमोच | मुमुचतुः | मुमुचुः |
| | मध्यमपुरुष | मुमोचिथ | मुमुचथुः | मुमुच |
| | उत्तमपुरुष | मुमोच | मुमुचिव | मुमचिम |
| **मुच् लिट् आ.**– | प्रथमपुरुष | मुमुचे | मुमुचाते | मुमुचिरे |
| | मध्यमपुरुष | मुमुचिषे | मुमुचाथे | मुमचिध्वे |
| | उत्तमपुरुष | मुमुचे | मुमुचिवहे | मुमचिमहे |

**लुट्मा** मोक्तासि, मोक्तासे आदि । **लृट्मा** मोक्ष्यति, मोक्ष्यते आदि । **लोट्मा** मुञ्चतु, मुञ्चताम् आदि । **लङ्मा** अमुञ्चत्, अमुञ्चत आदि । **विधिलिङ्मा** मुञ्चेत्, मुञ्चेत । **आशीर्लिङ्मा** मुच्यात्, मुक्षीष्ट आदि ।

**लुङ्**– परस्मैपदमा लृकारको इत्संज्ञा हुने धातुले "पुषादिद्युताद्य्०"ले च्लिका स्थानमा अङ् हुन्छ । अमुचत् आदि रूप हुन्छन् । आत्मनेपदमा सिच् हुन्छ । यसको साधनप्रक्रिया संक्षेपमा तल दिइन्छ ।

---

अमुचत्, अमुक्त । अमुक्षाताम् ॥ **लुप्लृ** छेदने ॥७॥ लुम्पति, लुम्पते । लोप्ता । अलुपत्, अलुप्त ॥ **विद्लृ** लाभे ॥८॥ विन्दति, विन्दते । विवेद, विविदे ॥ व्याघ्रभूतिमते सेट् । वेदिता । भाष्यमतेऽनिट् ।

---

**अमुक्त**– मुच् लुङ् 'अमुच्+स्त', यहाँ "झलो झलि"ले सकारको लोप, "चोःकुः"ले कुत्व भयो, 'अमुक्त' सिद्ध भयो ।

**अमुक्षाताम्**– मुच् लुङ् 'अमुच्+स्+आताम्' यहाँ कुत्व, षत्व, क्षत्व भयो, 'अमुक्षाताम्' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि जान्नू ।

| **मुच् लुङ् आ.**– | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अमुक्त | अमुक्षाताम् | अमुक्षत |
| | मध्यमपुरुष | अमुक्थाः | अमुक्षाथाम् | अमुग्ध्वम् |
| | उत्तमपुरुष | अमुक्षि | अमुक्ष्वहि | अमुक्ष्महि |

लृङ्मा- अमोक्ष्यत्, अमोक्ष्यत आदि रूप हुन्छन् ।

**लुप्लृ** धातु काट्नु अर्थमा छ । यो धातु लृदित् उभयपदी हो । (अनिट् सकर्मक )

**लुम्पति**– लुप धातुदेखि लट्, परस्मैपद ति, श प्रत्यय, 'लुप्+अति' यहाँ "शे मुचादीनाम्"ले नुम् आगम, अनुस्वार, परसवर्ण भयो; 'लुम्पति' सिद्ध भयो । यस्तै प्रकारले लुम्पतः, लुम्पन्ति । लुम्पसि, लुम्पथः, लुम्पथ । लुम्पामि, लुम्पावः, लुम्पामः यी रूप हुन्छन् । आत्मनेपदमा लुम्पते, लुम्पेते, लुम्पन्ते आदि रूप हुन्छन् । **लिट् लकारमा**– परस्मैपद र आत्मदेपद दुवैमा क्रादिनियमले नित्य इट् आगम हुन्छ ।

| **मुच् लिट् पर.**– | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | लुलोप | लुलुपतुः | लुलुपुः |
| | मध्यमपुरुष | लुलोपिथ | लुलुपथुः | लुलुप |
| | उत्तमपुरुष | लुलोप | लुलुपिव | लुलुपिम |
| **मुच् लिट् आ.**– | प्रथमपुरुष | लुलुपे | लुलुपाते | लुलुपिरे |
| | मध्यमपुरुष | लुलुपिषे | लुलुपाथे | लुलुपिध्वे |
| | उत्तमपुरुष | लुलुपे | लुलुपिवहे | लुलुपिमहे |

**लुट्मा** लोप्तासि, लोप्तासे । **लृट्मा** लोप्स्यति, लोप्स्यते । **लोट्मा** लुम्पतु, लुम्पताम् । **लङ्मा** अलुम्पत्, अलुम्पत । **विधिलिङ्मा**– लुम्पेत्, लुम्पेत । **आशीर्लिङ्मा** लुप्यात्, लुप्सीष्ट । **लुङ्मा** अलुपत् अलुप्त । **लृङ्मा** अलोप्स्यत्, अलोप्स्यत आदि रूप हुन्छन् ।

**विद्लृ** धातु पाउनु अर्थमा छ । लृदित् उभयपदी सकर्मक हो । **व्याघ्रभूतिमत इति**– (व्याघ्रभूति ऋषिका मतमा यो धातु सेट् र भाष्यकारका मतमा अनिट् हो ।)

**लिट्मा** सेट् मान्दा "आर्धधातुकस्येड्०"ले स्वतः इट् आगम नित्य हुन्छ । अनिट् मान्दा पनि "एकाच०"ले निषेध भएपछि "कृसभृवृ०"ले सर्वत्र नित्य इट् हुन्छ । किनकि यो धातु अजन्त र अकारवान् छैन, क्रादिभिन्न छ र परस्मैपदमा र आत्मनेपदमा इट् आगम पाउने ठाउँमा नित्य इट् आगम हुन्छ ।

**परस्मैपदमा**– विवेद, विविदतुः, विविदुः, विवेदिथ इत्यादि रूप छन् । **आत्मनेपदमा**– विविदे, विविदाते, विविदिरे, विविदिषे इत्यादि रूप हुन्छन् । **लुट्मा** सेट् पक्षमा वेदितासि, वेदितासे आदि । अनिट् पक्षमा वेत्तासि, वेत्तासे आदि । **लृट्मा** सेट् पक्षमा वेदिष्यति, वेदिष्यते आदि ।

परिवेत्ता ॥ **षिच** क्षरणे ॥९॥ सिञ्चति, सिञ्चते ॥

**६५५. लिपिसिचिह्वश्च ३।१।५३॥**

एभ्यश्च्लेरङ् स्यात् । असिचत् ॥

**६५६. आत्मनेपदेष्वन्यतरस्याम् ३।१।५४॥**

लिपिसिचिह्वः परस्य च्लेरङ् वा । असिचत, असिक्त ॥

---

अनिट् पक्षमा वेत्स्यति, वेत्स्यते आदि रूप हुन्छन् ।

**परिवेत्ता**– यो परि उपसर्गपूर्वक विद् धातुको लुट्को रूप हो । परि उपसर्गपूर्वक विद् धातुको तृच् प्रत्ययमा पनि यो रूप बन्दछ । दाजुको बिहा नगरी कान्छाको बिहा गरियो भने त्यो भाइलाई 'परिवेत्ता' भन्दछन् । "परिवेत्ताऽनुजोऽनूढे ज्येष्ठे दारपरिग्रहात्" (अमरकोश)

**सिच** धातु सेचन गर्नु अर्थमा छ । अकारको इत्संज्ञा, लोप हुन्छ । यो धातु स्वरितेत् उभयपदी अनिट् सकर्मक छ । सिच् धातुका रूप लुङ्बाहेक अरू लकारमा मुच् धातुका जस्तै हुन्छन् ।

**लट्मा** सिञ्चति, सिञ्चते आदि । **लिट्मा** सिषेच, सिषिचे आदि । **लुट्मा** सेक्तासि, सेक्तासे आदि । **लृटमा** सेक्ष्यति, सेक्ष्यते आदि । **लोट्मा** सिञ्चतु, सिञ्चताम् आदि । **लङ्मा** असिञ्चत्, असिञ्चत आदि । **विधिलिङ्मा** सिञ्चेत् सिञ्चेत आदि । **आशीर्लिङ्मा** सिच्यात्, सिक्षीष्ट आदि रूप हुन्छन् । लुङ्मा विशेष प्रक्रिया छ ।

**लिपीति**– लिप् सिच् र ह्वा धातुदेखि पर रहेका च्लिका स्थानमा अङ् होस्, परस्मैपद पर भएमा ।

**असिचत्**– सिच धातुदेखि लुङ्, अट् आगम तिप्, च्लि, ति, 'असिच्+च्लि+ति' यहाँ "च्लेः सिच्"लाई बाधेर "लिपिसिचि०"ले अङ् भयो, 'असिच्+अ+ति', तिका इकारको "इतश्च"ले लोप भयो, 'असिचत्' सिद्ध भयो ।

**सिच् लुङ् परस्मैपद (अङ् भएको पक्ष)**–

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | असिचत् | असिचताम् | असिचन् |
| मध्यमपुरुष | असिचः | असिचतम् | असिचत |
| उत्तमपुरुष | असिचम् | असिचाव | असिचाम |

**आत्मनेपदेष्विति**– लिप् सिच् र ह्वा धातुदेखि पर रहेका च्लिका स्थानमा अङ् विकल्पले होस्, आत्मनेपद पर भएमा । आत्मनेपदमा वैकल्पिक अङ् हुने हुँदा एकपक्षमा सिच् हुन्छ । दुई थरी रूप हुन्छन् ।

**असिचत**– 'असिच्+च्लि+त' भएपछि "च्लेः सिच्"लाई बाधेर "आत्मनेपदेष्वन्यतरस्याम्"ले वैकल्पिक अङ् भयो, पूर्ववत् 'असिचत' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध गर्नू ।

**सिच् लुङ् आत्मनेपद (अङ् भएको पक्ष)**–

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | असिचत | असिचेताम् | असिचन्त |
| मध्यमपुरुष | असिचथाः | असिचेथाम् | असिचध्वम् |
| उत्तमपुरुष | असिचे | असिचावहि | असिचामहि |

**असिक्त**– आत्मनेपदेष्वन्यतरस्याम्"ले अङ् नभएका पक्षमा 'असिच्+च्लि+त' यहाँ "च्लेः सिच्"ले च्लिका स्थानमा सिच् भयो, 'असिच्+स्+त', "झलो झलि"ले सलोप कुत्व भयो, 'असिक्त' सिद्ध भयो ।

---

**लिप** उपदेहे ॥१०॥ उपदेहो वृद्धिः । लिम्पति, लिम्पते । लेप्ता । अलिपत्, अलिपत, अलिप्त ॥

## इत्युभयपदिनः

**कृती** छेदने ॥११॥ कृन्तति । चकर्त कर्तिता । कर्तिष्यति, कर्त्स्यति । अकर्तीत् ॥
**खिद** परिघाते ॥१२॥

---

**असिक्षाताम्**- अङ् नभएको पक्षमा सिच् भयो, 'असिच्+स', आताम् यहाँ कुत्व, षत्व, क्षत्व भयो, 'असिक्षाताम्' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि हुन्छन् ।

**सिच् लुङ् (सिच् नभएको पक्ष)**-

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | असिक्त | असिक्षाताम् | असिक्षत |
| मध्यमपुरुष | असिक्थाः | असिक्षाथाम् | असिग्ध्वम् |
| उत्तमपुरुष | असिक्षि | असिक्ष्वहि | असिक्ष्महि |

**लृङ्मा** असेक्ष्यत् । असेक्ष्यत आदि रूप हुन्छन् । पूर्ववत् ऊह गर्नू ।

**लिप**- धातु लिप्नु अर्थमा छ ।

**उपदेह इति**- उपदेह भनेको वृद्धि हो । लिप्ता जहाँ जे लिपिन्छ त्यो बढ्छ । यो धातु स्वरिवेत्, उभयपदी हो । (अनिट् सकर्मक)

यस धातुका रूप लुप् धातुका जस्तै हुन्छन्, मूलमा केही रूप दिएको छ । **लुङ्मा** सिच् धातुमा जस्तै परस्मैपदमा नित्य अङ् र आत्मनेपदमा वैकल्पिक अङ् हुन्छ । यसमा भन्दा सिच् धातुमा कुत्व कार्य अधिक छ ।

**उभयपदी धातु सकिए ।**

---

**अब परस्मैपदी धातुको प्रक्रिया शुरु हुन्छ ।**

**कृती** धातु काट्नु अर्थमा छ । ईकार उदात्त हो । इत्संज्ञा लोप हुन्छ । यो धातु परस्मैपदी हो । (सेट् सकर्मक )

**कृन्तति**- कृत्, लट्, तिप्, श "शे मुचादीनाम्"ले नुम् भयो, 'कृन्तति' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप हुन्छन् ।

चकर्त कृत् लिट्, तिप्, णल्, 'कृत्+अ', 'कर्त्+कृत्+अ', 'ककृत+अ' भयो, चुत्व लघूपध गुण भयो, 'चकर्त' सिद्ध भयो । यस्तै प्रकारले चकृततुः, चकृतुः आदि रूप हुन्छन् ।

"चकर्त सप्तधा गर्भं वज्रेण कनकप्रभम्" । (श्रीमद्भागवत ।

**लुट्मा**- कर्तिता आदि रूप हुन्छन् ।

**लृट्मा**- स्य प्रत्ययको "सेऽसिचि कृतचृतच्छृदतृदनृतः"ले वैकल्पिक इट् हुन्छ ।

कर्तिष्यति । कर्त्स्यति आदि रूप हुन्छन् ।

**लोट्**- आदि लकारमा कृन्ततु । अकृन्तत् । कृन्तेत् । कृत्यात् । अकर्तीत् । अकर्तिष्यत् । अकर्त्स्यत् आदि रूप हुन्छन् । अकर्तीत् यहाँ "नेटि"ले वृद्धिनिषेध हुन्छ ।

**खिद्** धातु चोट् पाउनु, खिन्न हुनु अर्थमा छ । यो धातु परस्मैपदी हो ॥(अनिट सकर्मक)

---

खिन्दति । चिखेद । खेत्ता ॥ **पिश** अवयवे ॥१३॥ पिंशति । पेशिता ॥ **ओव्रश्चू** छेदने ॥१४॥ वृश्चति । वव्रश्च । वव्रश्चिथ, वव्रष्ठ ।

---

यो धातु मुच् आदि धातुभित्र पर्ने हुनाले श प्रत्यय पर भएमा नुम् आगम हुन्छ । खिन्दति । चिखेद । खेत्ता । खेत्स्यति आदि रूप हुन्छन् ।

**पिश** धातु पिस्नु अर्थमा छ । यो धातु परस्मैपदी हो । (सेट् सकर्मक )

पिश धातु पनि मुच् आदि धातुभित्र पर्ने हुनाले शप्रत्यय परभएमा नुम् आगम हुन्छ । लट् आदि लकारमा पिंशति । पिपेश । पेशिता । पेशिष्यति । पिंशतु । अपिंशत् । पिंशेत् । पिश्यात् । अपेशीत् । अपेशिष्यत् आदि रूप हुन्छन् ।

**ओव्रश्चू** धातु काट्नु अर्थमा छ । ओ र ऊको इत्संज्ञा, लोप हुन्छ । यो धातु परस्मैपदी हो । (सेट् सकर्मक) दीर्घ ऊकारको इत्संज्ञा हुने हुनाले यो वेट् भयो, अर्थात् "स्वरतिसूति०" लाग्छ ।

**वृश्चति**– व्रश्च् धातुदेखि लट्, तिप्, श, 'व्रश्च्+अ+ति', भएपछि शको अकार ङित् हुनाले "ग्रहिज्या०"ले संप्रसारण हुँदा "न संप्रसारणे०" ज्ञापक भएर रेफका स्थानमा पहिले संप्रसारण भयो, पूर्वरूप 'वृश्च्+अ+ति', "न संप्रसारणे०"ले वकारको संप्रसारण निषेध भयो, 'वृश्चति' सिद्ध भयो ।

| **व्रश्च लट्**– | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | वृश्चति | वृश्चतः | वृश्चन्ति |
| | मध्यमपुरुष | वृश्चसि | वृश्चथः | वृश्चथ |
| | उत्तमपुरुष | वृश्चामि | वृश्चावः | वृश्चामः |

**वव्रश्च**– व्रश्च् धातुदेखि लिट्, तिप्, णल्, द्वित्व, 'व्रश्च्+व्रश्च्+अ' भएपछि, "लिटचभ्यासस्योभयेषाम्"ले अभ्यासको संप्रसारण हुँदा रेफको पहिले संप्रसारण भयो र पूर्वरूप हुँदा 'वृश्च्+व्रश्च्+अ' "उरत्"ले अर्, 'वर्श्च्+व्रश्च्+अ', भएपछि ऋका स्थानमा भएको अर् संप्रसारण पर भएकोले "न संप्रसारणे०"ले वकारको संप्रसारण निषेध भयो, हलादिशेष भयो, 'वव्रश्च' सिद्ध भयो । यस्तै प्रकारले वव्रश्चतुः, वव्रश्चुः यहाँ पनि द्वित्व भएपछि "लिटचभ्यासस्योः०"ले अभ्यासको संप्रसारण हुन्छ । अतुस्, उस् संयोगदेखि पर हुनाले कित् छैनन् । अतः ग्रहिज्याले संप्रसारण पाउँदैन । वस्तुतः व्रश्च धातुको लिट्मा संप्रसारण गर्नको केही फल छैन । संप्रसारण नगरे पनि यिनै रूप सिद्ध हुन्छन् ।

यस्तै– अथुस्, अ, र व, म,मा पनि कित्व नहुनाले ग्रहिज्या लाग्दैन । कित् विभक्तिमा सर्वत्र "लिटचभ्यासस्य०"ले द्वित्व भएपछि, अभ्यासको संप्रसारण हुन्छ ।

**वव्रश्चिथ / वव्रष्ठ**– 'व्रश्च+थ', यहाँ "आर्धधातुकस्येड्वलादेः"ले पाएको नित्य इट्लाई बाधेर "स्वरतिसूति०"ले वैकल्पिक इट् भयो, द्वित्व भयो, पूर्ववत् संप्रसारण, हलादिशेष भयो, 'वव्रश्चिथ' सिद्ध भयो । इट् नभएमा पनि द्वित्व संप्रसारण हलादिशेष भयो, 'वव्रश्च्+थ', श्चुत्वबाट निष्पन्न तालव्य शकारलाई असिद्ध देखेर "स्कोः संयोगाद्योः०"ले लोप भयो, 'वव्रच्+थ', "व्रश्च भ्रस्ज०"ले षत्व भयो, ष्टुत्व भयो, 'वव्रष्ठ' सिद्ध भयो । अथुस् र अ,मा वव्रश्चथुः, वव्रश्च "लिट्यभ्यासस्य०"ले पूर्ववत् संप्रसारण हुन्छ ।

**वव्रश्चिव / वव्रश्च्व**– 'व्रश्च+व', यहाँ "आर्धधातुकस्येड्०"ले पाएको इट्लाई बाधेर "स्वरति सूति०"ले वैकल्पिक इट् भयो, द्वित्व संप्रसारण हलादिशेष भयो, 'वव्रश्चिव' सिद्ध भयो । इट् नभएमा द्वित्वादि पूर्ववत् भयो, 'वव्रश्च्व' सिद्ध भयो । यस्तै मस्मा वव्रश्चिम, वव्रश्च्म यी रूप हुन्छन् ।

---

व्रश्चिता, व्रष्टा । व्रश्चिष्यति, व्रक्ष्यति । वृश्च्यात् । अव्रश्चीत्, अव्राक्षीत् ॥ **व्यच व्याजीकरणे ॥१५॥** विचति । विव्याच ।

---

यहाँ कसै कसैले "स्वरतिसूति०"लाई बाधेर क्रादिनियमले नित्य इट् हुन्छ भन्नु अयुक्तियुक्त कुरा हो । माधवीयधातुवृत्तिकारले "ऊदित्वात् सर्वत्रेड्विकल्पः क्रादिनियमः प्रतिषिद्धविषय इति थल्यपि विकल्प एव भवति" भनेका छन् । अनि अदादिको मृजूधातुको व, मा "ऊदित्वादिड् विकल्पः पूर्ववदजादौ वृद्धिविकल्पः । "ममार्जिव, ममृजिव, ममृज्व" यसरी वैकल्पिक इट् भएका रूप देखाएका छन् । **मृजू** धातु र **व्रश्चू** धातु दुवै सेट् हुन् । मृजू धातुमा वैकल्पिक इट्लाई क्रादिनियमले बाध्दैन भने व्रश्चूमा कसरी बाध्छ ? यो आफै विचार गर्नू । यो कुरा स्मरणीय छ कि क्रादिनियम इट् निषेध भएका ठाउँमा मात्र लाग्छ यहाँ इट् आगमको निषेध हुँदैन ।

**व्रश्चिता/व्रष्टा-** इट् आगम भएको पक्षमा 'व्रश्चिता' र इट् नभएको पक्षमा सकारको संयोगादिलोप, षत्व, ष्टुत्व, भयो, 'व्रष्टा' यी दुवै रूप सिद्ध भए ।

**व्रश्चिष्यति/व्रक्ष्यति-** लृट्मा इट्आगम भएको पक्षमा 'व्रश्चिष्यति' । इट् नभएको पक्षमा संयोगादिलोप, "व्रश्चभ्रस्ज०"ले षत्व, कत्व, षत्व, क्षत्व भयो, 'व्रक्ष्यति' सिद्ध भयो ।

**लोट्मा** वृश्चतु । **लङ्मा** अवृश्चत् । **विधिलिङ्मा** वृश्चेत् । **आशीर्लिङ्मा** यासुट् कित् ङित् हुनाले संप्रसारण हुन्छ, 'वृश्च्यात्' ।

**अव्रश्चीत्-** व्रश्च धातुको लुङ्मा इट् आगम भएको पक्षमा हलन्तलक्षण वृद्धिको "नेटि"ले निषेध भयो, पूर्ववत् सबै प्रक्रिया भयो र 'अव्रश्चीत्' सिद्ध भयो । यस्तै प्रकारले बाँकी रूप- अव्रश्चिष्टाम्, अव्रश्चिषुः । अव्रश्चीः, अचश्चिष्टम्, अव्रश्चिष्ट । अव्रश्चिषम्, अव्रश्चिष्व, अव्रश्चिष्म ।

**अव्राक्षीत्-** इट् नभएको पक्षमा 'अव्रश्च्+स्+ईत्' यहाँ "वदव्रज०"ले वृद्धि 'अव्राश्च्+स+ईत्', संयोगादिलोप, षत्व, कत्व, षत्व, क्षत्व भयो, 'अव्राक्षीत्' सिद्ध भयो ।

**अव्राष्टाम्-** तस्मा 'अव्रश्च+स्+ताम्', वृद्धि, संयोगादिलोप, "झलो झलि"ले सिच्का सकारको लोप, षत्व, ष्टुत्व भयो, 'अव्राष्टाम्' सिद्ध भयो । यस्तै अरू रूप पनि ऊह गर्नू ।

| **व्रश्च् लुङ्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| अनिट् पक्ष | प्रथमपुरुष | अव्राक्षीत् | अव्राष्टाम् | अव्राक्षुः |
| | मध्यमपुरुष | अव्राक्षीः | अव्राष्टम् | अव्राष्ट |
| | उत्तमपुरुष | अव्राक्षम् | अव्राक्ष्व | अव्राक्ष्म |

**लृङ्मा-** अव्रश्चिष्यत्, अव्रक्ष्यत् आदि रूप हुन्छन् ।

**व्यच** धातु छल्नु, ठग्नु अर्थमा छ । यो धातु परस्मैपदी हो । (सेट् सकर्मक )

**विचति-** पूर्ववत् 'व्यच्+अति' यहाँ "ग्रहिज्या०"ले "न संप्रसारणे०" यो सूत्र ज्ञापक हुनाले यकारको पहिले संप्रसारण पूर्वरूप 'विच्+अति', पुनः संप्रसारण पाएको निषेध भयो, 'विचति' सिद्ध भयो ।

| **व्रश्च् लट्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | विचति | विचतः | विचन्ति |
| | मध्यमपुरुष | विचसि | विचथः | विचथ |
| | उत्तमपुरुष | विचामि | विचावः | विचामः |

**विव्याच-** 'व्यच्+व्यच्+अ', "लिटचभ्यासस्य०"ले पूर्ववत् संप्रसारण 'विव्यच्+अ', वृद्धि भयो, 'विव्याच' सिद्ध भयो ।

विविचतुः। व्यचिता। व्यचिष्यति। विच्यात्। अव्याचीत्, अव्यचीत्। "व्यचेः कुटादित्वमनसि" इति तु नेह प्रवर्तते अनसीति पर्युदासेन कृन्मात्रविषयत्वात्॥ **उछि** उञ्छे॥१६॥ उञ्छति। 'उच्छ्छः कणश आदानं कणिशाद्यर्जनं शिलम्।' इति यादवः॥

---

**विविचतुः**– अतुस्मा "संप्रसारणं तदाश्रयं च कार्य०" लगाएर द्वित्व भन्दा पहिले संप्रसारण भयो, 'विच्+अतुस्', द्वित्व, अभ्यासकार्य भयो, 'विविचतुः' सिद्ध भयो। व्यच् धातुका लिट्मा संप्रसारण विषयमा व्यध धातुमा जस्तै प्रक्रिया सम्झनू।

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | विव्याच | विविचतुः | विविचुः |
| मध्यमपुरुष | विव्यचिथ | विविचथुः | विविच |
| उत्तमपुरुष | विव्याच/विव्यच | विविचिव | विविचिम |

**लुट्मा** व्यचिता। **लृट्मा** व्यचिष्यति। **लोट्मा** विचतु। **लङ्मा** अविचत्। **विधिलिङ्मा** विचेत्। **आशीर्लिङ्मा** विच्यात्। **लुङ्मा** "अतो हलादेः"ले वैकल्पिक वृद्धि भयो, अव्याचीत्/अव्यचीत्। **लृङ्मा** अव्यचिष्यत् आदि रूप हुन्छन्।

व्यचेरिति "व्यचेः कुटादित्वमनसि" यो वार्तिक यहाँ लाग्दैन। अनसि यहाँ निषेध पर्युदास हुनाले त्यसको विषय कृत्प्रत्ययमात्र छ। यस पङ्क्तिको आशय- "व्यचेः कुटादित्वमनसि" यस वार्तिकको अर्थ हो व्यच् धातुको कुटादिमा पाठ होस्, अस्प्रत्यय भिन्न अस्सदृश प्रत्यय पर भएमा। अनसिको अर्थ हो अस् भिन्न यहाँ नञ्सँग अस्को समास भएको छ। निषेधार्थक नञ् दुई प्रकारको छन्। एक पर्युदास, र अर्को प्रसज्य। पर्युदासले तद् भिन्न तत्सदृशलाई ग्रहण गर्दछ, प्रसज्य प्रतिषेधले अत्यन्त निषेध गर्दछ। पर्युदासको उदाहरण हो- 'अब्राह्मणं कञ्चिदानय' यहाँ 'बाहुन बाहेक अरू कोही ल्याउ' भन्दा बाहुनबाहेक संसारमा धेरै पदार्थ छन्- कुकुर, गधा, स्याल आदि आदि। तर यहाँ वक्ताको तात्पर्य छ बाहुन भिन्न बाहुन जस्तो मानिसमा। अतः मानिस नै ल्याउनु पर्छ, कुकुर गधा आदि ल्याउन हुँदैन। जस्तो कि 'इह भूतले घटो नास्ति', भन्दा प्रसज्य प्रतिषेध बुझिन्छ। अझ स्पष्ट त 'शशकस्य श्रृङ्गं न भवति', *खरायोको सिङ् हुँदैन,* यो वाक्यमा प्रसज्य अर्थ भएको नञ् बुझिन्छ। त्यस्तै यहाँ अस् भिन्न भन्दा अस् प्रत्यय कृत्प्रत्यय भएकोले अस् भिन्न अस् सदृश कृत्प्रत्यय नै पर चाहिन्छ अरू प्रत्यय पर भएमा कुटादित्व हुँदैन। कुटादित्व नभएपछि "गाङकुटादिभ्यो०" लगाएर ङित्त्व हुँदैन। ङित्त्व नभएपछि 'व्यचिता' इत्यादिमा संप्रसारण हुन्न।

कुटादि गण तुदादिमा छ त्यहाँ कुट आदि ३५ धातु पर्छन्।

**उछि** धातु एक एक गरेर जम्मा गर्नु अर्थमा छ।

**उञ्छः कणश इति-** यादव कोषमा अन्नका दाना एक एक गरेर बटुल्नुलाई उञ्छ र धानका बाला आदि खोज्नुलाई शिल भनेको छ, यसैलाई सिला खोज्नु भन्छन्। यो धातु इदित् हो, अतः "इदितो नुम् धातोः"ले नुम् हुन्छ। यो धातु परस्मैपदी हो। (सेट्, कर्म अन्तर्हित भए अकर्मक, कर्म अलग रहेमा सकर्मक हुन्छ) बदराणि उञ्छति, यस वाक्यमा सकर्मक देखिन्छ।

**लट्मा** उञ्छति इत्यादि रूप हुन्छन्। **लिट्मा** "संयोगे गुरु" यो सूत्रले संयोग पर हुनाले उञ्छका उकारलाई गुरुसंज्ञा हुन्छ र "इजादेश्च गुरुमतोऽनृच्छः"ले आम् आगम हुन्छ, "कृञ्चानुप्रयुज्यते लिटि"ले लिट् पर भएका कृ, भू, अस्, को अनु प्रयोग हुन्छ। उञ्छाञ्चकार, उञ्छाम्बभूव, उञ्छामास आदि रूप हुन्छन्।

**लुट्** आदि लकारमा उञ्छिता। उञ्छिष्यति। उञ्छतु। औञ्छत्। उञ्छेत्। उञ्छ्यात्। औञ्छीत्। औञ्छिष्यत् आदि रूप हुन्छन्।

**ऋच्छ** गतीन्द्रियप्रलयमूर्तिभावेषु ॥१७॥ ऋच्छति । ऋच्छत्यृतामिति गुणः । द्विहल्ग्रहणस्यानेकहलुपलक्षणत्वान्नुट् । आनर्च्छ । आनर्च्छतुः । ऋच्छिता । **उज्झ** उत्सर्गे ॥१८॥ उज्झति ॥ **लुभ** विमोहने ॥१९॥ लुभति ॥

**६५७. तीषसहलुभरुषरिषः ७।२।४८॥**

इच्छत्यादेः परस्य तादेरार्धधातुकस्येड्वा स्यात् । लोभिता, लोब्धा ।

---

**ऋच्छ** धातु हिंड्नु, मूर्च्छा पर्नु, कठोर हुनु अर्थमा छ । (सेट् अकर्मक)

**लट्मा** ऋच्छति, ऋच्छतः, ऋच्छन्ति आदि रूप हुन्छन् ।

लिट्मा "ऋच्छत्यृताम्"ले गुण हुन्छ । "तस्मान्नुड् द्विहलः" यस सूत्रमा द्विहल् ग्रहण गर्नु अनेक हल्को उपलक्षण हो । अतः यहाँ तीन हल् भए पनि नुट् हुन्छ ।

**आनर्च्छ–** लिट्मा 'ऋच्छ्+अ' भएपछि द्वित्व, 'ऋच्छ्+ऋच्छ्+अ', 'अर्च्छ्+ऋच्छ+अ', हलादिशेष, "अत आदेः"ले दीर्घ, 'आ+ऋच्छ्+अ', "ऋच्छत्यृताम्"ले गुण 'आ+अर्च्छ्+अ' भयो, "तस्मान्नुड्०"ले नुट् भयो, 'आन्+अर्च्छ्+अ' वर्णमेलन भयो, 'आनर्च्छ' सिद्ध भयो । यस्तै प्रकारले 'आ+आर्च्छ्+अतुस्', नुट्, 'आनर्च्छतुः' सिद्ध हुन्छ । अरू रूप पनि यसैगरी सिद्ध हुन्छन् ।

**लुट्मा** ऋच्छिता आदि । **लृट्मा** ऋच्छिष्यति आदि । **लोट्मा** ऋच्छतु आदि । **लङ्मा** आर्च्छत् आदि । **विधिलिङमा** ऋच्छेत् आदि । **आशीर्लिङ्मा** ऋच्छ्यात् आदि । **लुङ्मा** आर्च्छीत् आदि । **लृङ्मा** आर्छिष्यत् आदि रूप हुन्छन् ।

**उज्झ** धातु छोड्नु अर्थमा छ । अकारको इत्संज्ञा लोप हुन्छ । यो धातु परस्मैपदी हो । (सेट् सकर्मक)

**लट्मा** उज्झति आदि । **लिट्मा** "इजादेश्च"ले आम् प्रत्यय उज्झाञ्चकार आदि । **लुट्मा** उज्झिता आदि । **लृटमा** उज्झिष्यति आदि । **लोट्मा** उज्झतु आदि । **लङ्मा** औज्झत् आदि । **विधिलिङ्मा** उज्झेत् आदि । **आशीर्लिङ्मा** उज्झ्यात् आदि । **लुङ्मा** औज्झीत् आदि । **लृङ्मा** औज्झिष्यत् आदि रूप हुन्छन् । "सपदि विगतनिद्रस्तल्पमुज्झाञ्चकार" (रघुवंश)

**लुभ** धातु विशेष मोहित हुनु अर्थात् लोभ गर्नु अर्थमा छ । यो धातु परस्मैपदी हो । (सेट् लज्ज धातुमा लज्जाकर्म अन्तर्हित भएझैं, लोभ कर्म पनि धातुभित्र अन्तर्हित भएमा अकर्मक अन्यथा सकर्मक )

**लट्मा** लुभति आदि । **लिट्मा** लुलोभ आदि रूप हुन्छन् । "तथापि रामो लुलुभे मृगाय" यहाँ आत्मनेपदको प्रयोग आर्ष हो ।

**तीषसहेति-** इष, सह, लुभ रुष रिष धातुदेखि पर रहेको तकार आदिमा हुने आर्धधातुकसंज्ञक प्रत्ययको इट् आगम विकल्पले होस् ।

**लोभिता/लोब्धा-** लुट्मा 'लुभ्+तास्+आ', भएपछि "आर्धधातुकस्येड्वलादेः"ले तासिको नित्य इडागम पाएमा बाधेर "तीषसह०"ले वैकल्पिक इट् आगम भएपछि, 'लुभ्+इतास्+आ', यहाँ लघूपधगुण, टिलोप भयो, 'लोभिता' सिद्ध भयो । इट् आगम नभएको पक्षमा गुण, धत्व, जश्त्व, टिलोप भयो, 'लोब्धा' सिद्ध भयो । यी दुई रूप भए ।

लुभ् लुट् (इट् भएको पक्षमा)-

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | लोभिता | लोभितारौ | लोभितारः |
| मध्यमपुरुष | लोभितासि | लोभितास्थः | लोभितास्थ |
| उत्तमपुरुष | लोभितास्मि | लोभितास्वः | लोभितास्मः |

लोभिष्यति ॥ **तृप तृम्फ** तृप्तौ ॥ २०-२१॥ तृपति । ततर्प । तर्पिता । अतर्पीत् ॥ तृम्फति । **वा.**(शे तृम्फादीनां नुम् वाच्यः) । आदिशब्दः प्रकारे, तेन येऽत्र नकारानुषक्तास्ते तृम्फादयः । ततृम्फ । तृफ्यात् ॥

---

लुभ् लुट् (इट् नभएको पक्षमा)–

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | लोब्धा | लोब्धारौ | लोब्धारः |
| मध्यमपुरुष | लोब्धासि | लोब्धास्थः | लोब्धास्थ |
| उत्तमपुरुष | लोब्धास्मि | लोब्धास्वः | लोब्धास्मः |

**लृट्मा** स्य प्रत्यय तकारादि न हुनाले "तीषसह०" लाग्दैन । लोभिष्यति आदि एकथरी मात्र रूप हुन्छन् । **लोट् आदि लकारमा**– लुभतु । अलुभत् । लुभेत् । लुभ्यात् । अलोभीत् । अलोभिष्यत् आदि रूप हुन्छन् ।

**तृप तृम्फ** धातु अघाउनु अर्थमा छन् । यी दुवै धातु परस्मैपदी हुन् । (सेट् अकर्मक)

**अनुदात्त** धातुमा तृप्य भनेर श्यन्ले निर्देश गरेको हुनाले दैवादिक तृप धातु अनिट् हो, यो सेट् हो ।

**लट् आदि लकारमा**– तृप धातुका तृपति । ततर्प । तर्पिता । तर्पिष्यति । तृपतु । अतृपत् । तृपेत । तृप्यात् । अतर्पीत् । अतर्पिष्यत् आदि रूप हुन्छन् । **लुङ्मा** हलन्तलक्षण वृद्धिको "नेटि"ले निषेध हुन्छ र लघूपध गुण हुन्छ ।

**(वा.)शे इति**– तृम्फ आदि धातुको श प्रत्यय पर भएमा नुम् आगम होस् भन्नु । आदि शब्द प्रकार अर्थात् सादृश्य अर्थमा छ । त्यसकारण यहाँ जो नकार संयुक्त धातु छन् । ती तृम्फ आदि हुन् । तृम्फ धातु नकारसंयुक्त कसरी भयो ?

"नकारजावनुस्वारपञ्चमौ झलि धातुषु ।
शकारजः शकारश्चे षाट्टवर्गस्तवर्गजः ॥"

धातुहरूमा झल् पर भएमा अनुस्वार र पञ्चमवर्ण (ङ,ञ,ण,न,म) छन् भने ती नकारबाट बनेका हुन् । अर्थात् "नश्चापदान्तस्य०"ले अनुस्वार र "अनुस्वारस्य ययि०"ले परसवर्ण भएर बनेका हुन् । चवर्ग पर भएमा शकार छ भने सकारबाट बनेको हो । रेफ र मूर्धन्य षकारदेखि पर रहेको टवर्ग छ भने त्यो तवर्गबाट भएको हो । अतः तृम्फ यहाँ झल्- फ पर भएमा पाँचौ वर्ण म नकारबाट बनेको हुनाले पहिले तृन्फ यस्तो थियो र अनुस्वार पर सवर्णलाई असिद्ध देखेर "अनिदितां०"ले नकारको लोप हुन्छ । अनि "शे तृम्फादीनां०"ले नुम् आगम हुन्छ ।

**तृम्फति**– तृम्फ धातुदेखि लट् तिप्, श, 'तृम्फ्+अ+ति', भएपछि अ ङित् हुनाले, अनुस्वार परसवर्ण असिद्ध भएर मकारलाई नकार देखेकोले "अनिदितां०"ले नकारको लोप भयो, 'तृफ्+अति', "शे तृम्फादीनां०"ले नुम् भयो, 'तृन्फ्+अ+ति', अनुस्वार परसवर्ण भयो, 'तृम्फति' सिद्ध भयो । **ततृम्फ**– लिट्मा 'तृम्फ+अ', 'तृम्फ+तृम्फ्+अ', 'तर्म्फ्+तृम्फ्+अ', हलादिशेष भयो, 'ततृम्फ' सिद्ध भयो ।

**ततृम्फतुः**– 'ततृम्फ्+अतुस्' यहाँ अतुस् संयोगदेखि पर रहेको हुनाले कित् हुँदैन । अतः नलोप हुँदैन र 'ततृम्फतुः' सिद्ध हुन्छ । यस्तै प्रकारले ततृम्फुः आदि रूप हुन्छन् । लुट् आदि लकारमा तृम्फिता । तृम्फिष्यति । तृम्फतु । अतृम्फत् । तृम्फेत् आदि रूप हुन्छन् ।

**तृफ्यात्**– 'तृम्फ+यात्' यहाँ यासुट् कित् ङित् छ र "अनिदितां०"ले नकारको लोप भयो, 'तृफ्यात्' सिद्ध भयो ।

---

**मृड पृड** सुखने ॥२२-२३॥ मृडति । पृडति ॥ **शुन** गतौ ॥२४॥ शुनति ॥ **इषु** इच्छायाम् ॥२५॥ इच्छति । एषिता, एष्टा । एषिष्यति । इष्यात् । ऐषीत् ॥ **कुट** कौटिल्ये ॥२६॥ गाङ्कुटादीति ङित्त्वम् । चुकुटिथ । चुकोट, चुकुट ।

---

**लुङ्मा** अतृम्फीत् आदि । **लृङ्मा** अतृम्फिष्यत् आदि रूप हुन्छन् ।

**मृड पृड** धातु सुख दिने अर्थमा छन् । दुवै धातु उदात्तेत् परस्मैपदी हुन् ।(सेट् सकर्मक )

**लट्आदि लकारमा** मृडति । पृडति । ममर्ड । पपर्ड । मर्डिता । पर्डिता । मर्डिष्यति । पर्डिष्यति । अमर्डीत् । अपर्डीत् । इत्यादि रूपहरू ऊह गर्नू ।

**शुन** धातु हिंड्नु अर्थमा छ । यो धातु परस्मैपदी हो । (सेट् सकर्मक ) लट् आदि लकारमा शुनति । शुशोन । शोनिता । शोनिष्यति । अशुनत् । शुनेत् । शुन्यात् । अशोनीत् । अशोनिष्यत् आदि रूप हुन्छन् ।

**इषु** धातु इच्छा गर्नु अर्थमा छ । उकारको इत्संज्ञा र लोप हुन्छ । यो धातु परस्मैपदी हो । (सेट् सकर्मक )

**इच्छति**- इष् लट्, तिप्, श, 'इष्+अति' यहाँ "इषुगमियमां छः"ले षकारका स्थानमा छकार भयो, 'इछ्+अति', "छे च"ले तुक्, चुत्व, 'इच्छ्+अति'- 'इच्छति' सिद्ध भयो ।

**इयेष**- इष् लिट्, तिप्, णल्, 'इष्+अ', द्वित्वादि 'इ+इष्+अ', लघूपधगुण 'इ+एष्+अ', "अभ्यासस्यासवर्णे"ले इयङ् भयो, 'इयेष' सिद्ध भयो ।

**ईषतुः**- 'इ+इष्+अतुस्', "अकः सवर्णे०"ले दीर्घ भयो, 'ईषतुः' सिद्ध भयो । यस्तै प्रकारले ईषुः इत्यादि सिद्ध हुन्छन् । थल् र व, म, मा पनि "आर्धधातुकस्येड्वलादेः"ले नित्य इट् आगम हुन्छ ।

**लुट्मा** "तीषसह०"ले वैकल्पिक इट् आगम हुन्छ । एषिता । एष्टा आदि रूप हुन्छन् । **लृटमा** "आर्धधातुकस्येड्०"ले नित्य इट्आगम हुन्छ । ऐषिष्यति आदि रूप हुन्छन् । लोट् आदि लकारमा इच्छतु । ऐच्छत् । इच्छेत् । इष्यात् आदि रूप हुन्छन् ।

**लुङ्मा ऐषीत्**- 'इष्+ल्', 'आट्आगम 'आ+इष्+ल्', वृद्धि, 'ऐष्+ल्', ति, च्लि, सिच्, 'ऐष्+स्+ति', इट्, 'ऐष्+इस्+ति', तिका इकारको लोप, ईट्, 'ऐष्+इस्+ईत्', सलोप, 'ऐषि+ईत्' दीर्घ भयो, 'ऐषीत्' सिद्ध भयो । ताम् आदिमा ऐषिष्टाम् ऐषिषुः । ऐषीः, ऐषिष्टम्, एषिष्ट । ऐषिषम्, ऐषिष्व, ऐषिष्म यी रूप हुन्छन् । **लृङ्मा** ऐषिष्यत् आदि रूप हुन्छन् ।

**कुट** धातु बाङ्गो हुनु अर्थमा छ । यो धातु परस्मैपदी हो । (सेट् अकर्मक )

**गाङ्कुटादीति**- "गाङ्कुटादिभ्यः०" ले ञित्, णित् भिन्न प्रत्ययको ङित्व हुन्छ ।

**चुकुटिथ**- 'चुकुट्+इथ', यहाँ लघूपधगुण पाएमा इथ यो ञित्, णित् प्रत्यय नहुनाले "गाङ्कुटादिभ्यो०"ले ङित्व भयो । "क्ङिति च"ले गुणनिषेध भयो, 'चुकुटिथ' सिद्ध भयो ।

**चुकोट/चुकुट**- उत्तमपुरुष णल् वैकल्पिक णित् हुनाले णित्व भएको पक्षमा गुण भयो, 'चुकोट' सिद्ध भयो । णित् नभएको पक्षमा "गाङ्कुटादिभ्यो०"ले ङित्व भयो, ङित्वात्, गुणनिषेध भयो, 'चुकुट' सिद्ध भयो । यसरी दुई रूप भए । यस्तै प्रकारले कुट धातुमा सर्वत्र ञित् णित् भिन्न प्रत्यय ङित् हुन्छन् र गुणनिषेध हुन्छ ।

**कुट् लिट्**-

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | चुकोट | चुकुटतुः | चुकुटुः |
| मध्यमपुरुष | चुकुटिथ | चुकुटथुः | चुकुट |
| उत्तमपुरुष | चुकोट/चुकुट | चुकुटिव | चुकुटिम |

कुटिता ॥ **पुट** संश्लेषणे ॥२७॥ पुटति पुपोट । पुटिता ॥ **स्फुट** विकसने ॥२८॥ स्फुटति । स्फुटिता ॥ **स्फुर स्फुल** संचलने ॥२९-३०॥ स्फुरति । स्फुलति ॥

६५८. **स्फुरतिस्फुलत्योर्निर्निविभ्यः** ८।३।७६॥

षत्वं वा स्यात् । निःष्फुरति, निःस्फुरति ॥ **णू** स्तवने ॥३१॥

---

**लुट्मा** कुटिता आदि । **लृट्मा** कुटिष्यति आदि । **लोट्मा** कुटतु आदि । **लङ्मा** अकुटत् आदि । **विधिलिङ्मा** कुटेत् आदि । **आशीर्लिङ्मा** कुटचात् आदि । **लृङ्मा** अकुटिष्यत् आदि रूप हुन्छन् ।

**पुट** धातु जोड्नु अर्थमा छ । यो धातु परस्मैपदी हो । (सेट् सकर्मक )

लट् आदि लकारमा पुटति, पुपोट इत्यादि सबै रूप कुट धातुका जस्तै हुन्छन् ।

**स्फुट** धातु विकास हुनु, फक्रनु अर्थमा छ । यो धातु परस्मैपदी हो । (सेट् अकर्मक)

**लट्मा** स्फुटति आदि । **लिट्मा** "शर्पूर्वाःखयः" यो सूत्र लाग्दछ । पुस्फोट आदि रूप हुन्छन् । सबै रूप तल दिइन्छ-

| **स्फुट् लिट्-** | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | पुस्फोट | पुस्फुटतुः | पुस्फुटुः |
| | मध्यमपुरुष | पुस्फुटिथ | पुस्फुटथुः | पुस्फुट |
| | उत्तमपुरुष | पुस्फोट/पुस्फुट | पुस्फुटिव | पुस्फुटिम |

यो स्फुट धातु षोपदश हैन । अतः आदेशभूत दन्त्य सकार नभएकोले "धात्वादेः षः सः" लाग्दैन । पुस्फोट आदि ठाउँमा "आदेशप्रत्यययोः"ले षत्व हुँदैन । षोपदश धातुहरूको विवरण तलको कारिकामा छ -

"सेक्-सृप-सृ-स्तृ-सृजस्तृस्त्याऽन्ये दन्त्याजन्तसादयः ।<br>एकाचः षोपदेशाः स्युः ष्वस्क्-ष्विद्-ष्वद्-ष्वञ्ज-स्वप्-ष्मिङः ॥"

सेक्, सृप्, सृज, स्तृ, स्त्या धातुदेखि बाहेक दन्तस्थानी वर्ण र अच् अन्तमा हुने, दन्त्य सकार आदिमा हुने एकाच् धातु र स्वस्क्, स्विद्, स्वद्, स्वञ्ज, स्वप्, स्मिङ् धातु, षोपदेश हुन् । दन्त्योष्ठवर्ण अन्तमा हुने सकार भएका धातुको पृथक् ग्रहण गर्नाले यहाँ केवल दन्तस्थानी वर्ण अन्तमा हुने दन्त्य सकार लिइन्छ । **षोपदेश** धातुमा "धात्वादेः षः सः"ले सत्व भएर दन्त्य सकार भएको हुँदा, आदेशभूत दन्त्य सकार हुन्छ र षत्व हुन्छ । अषोपदेश धातुमा आदेशभूत दन्त्य सकार हुँदैन र षत्व हुँदैन ।

**स्फुर** धातु, **स्फुल** धातु हल्लनु अर्थमा छन् । यी दुवै धातु परस्मैपदी हुन् । (सेट् अकर्मक) षोपदेश हैनन् । माथिका कारिकाअनुसार घटाउँदा स्पष्ट हुन्छ । लट् आदि लकारमा स्फुरति, स्फुलति । पुस्फोर, पुस्फोल आदि । स्फुल धातुका स्फुट धातुका जस्तै रूप हुन्छन् ।

**स्फुरतिस्फुलत्योरिति-** निर्, नि, वि उपसर्ग देखि पर रहेका स्फुर धातु र स्फुल धातुका दन्त्य सकारका स्थानमा षत्व विकल्पले होस् ।

**निष्फुरति/निस्फुरति-** निस्फुरति यहाँ "स्फुरति स्फुलत्योः०"ले नि उपसर्गदेखि पर रहेको स्फुर धातु हुनाले षत्व विकल्पले भयो, 'निष्फुरति' भयो । षत्व नभएका पक्षमा 'निस्फुरति' भयो । यी दुई रूप भए । यस्तै स्फुलतिमा नि उपसर्ग लाग्दा निष्फुलति, निस्फुलति यी दुई रूप हुन्छन् ।

**णू** धातु स्तुति गर्नु अर्थमा छ । यसमा कुनै वर्णको इत्संज्ञा हुन्न "शेषात्कर्तरि०"ले परस्मैपद हुन्छ । "णो नः"ले णकारका स्थानमा नकार हुन्छ । (सेट् सकर्मक )

परिणूतगुणोदयः । नुवति । नुनाव । नुविता ॥ **टुमस्जो** शुद्धौ ॥३२॥ मज्जति । ममज्ज । ममज्जिथ । मस्जिनशोरिति नुम् । **वा.**(मस्जेरन्त्यात्पूर्वो नुम्वाच्यः) । संयोगादिलोपः । ममङ्क्थ ।

---

**परिणूतेति**– यो णू धातु कुटादिगणभित्र पर्ने हुनाले इट् ङित् हुन्छ र इडादि प्रत्ययमा जहाँ जहाँ गुण वृद्धि पाउँछ, त्यहाँ निषेध हुन्छ र उवङ् हुन्छ । श प्रत्यय ङित् हुनाले श प्रत्यय पर भएमा गुण हुँदैन उवङ् नै हुन्छ । सर्वत्र ह्रस्व उकार नै देखिन्छ । ह्रस्व उकारान्त अथवा दीर्घ ऊकारान्तका समान नै रूप हुन्छन् । दीर्घ ऊकारान्त पढ्नको फल क्त्वा, क्त, क्तवतु र सन् प्रत्ययमा हुन्छ । सन् प्रत्यय "सनि ग्रहगुहोश्च"ले कित् हुन्छ । क्त्वा र क्त, क्तवतु, स्वतः कित् छन् । अतः यहाँ "श्र्युकः किति"ले इट् निषेध हुन्छ, र नूत्वा, नूतः, नूतवान्, नुनूषति यी रूप हुन्छन् । यसैको दिग्दर्शन "परिणूतगुणोदयः" यो उदाहरण यहाँ प्रस्तुत गरिएको हो । परिणूतो गुणानामुदयो यस्य सः- परिणूतगुणोदयः प्रशंसनीय छ गुणहरूको उदय जसको, भन्ने यसको अर्थ हो ।

**नुवति**– नू लट्, ति, श, 'नू+अति' यहाँ नूका ऊकारका स्थानमा "सार्वधातुकार्धधातुकयोः"ले गुण पायो, अ यो ङित् हुनाले "क्ङिति च"ले गुणनिषेध भयो, उवङ् भयो, 'नुवति' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप सिद्ध गर्नू । यो धातु कुटादिभित्र पर्ने हुनाले यसदेखि पर रहेका ञित्, णित् प्रत्ययभिन्न इट् आदिमा हुने प्रत्यय ङित् हुन्छन् ।

| **नू लिट्**– पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | नुनाव | नुनुवतुः | नुनुवुः |
| मध्यमपुरुष | नुनुविथ | नुनुवथुः | नुनुव |
| उत्तमपुरुष | नुनाव / नुनुव | नुनुविव | नुनुविम |

**लुट्मा** नुविता आदि । **लृट्मा** नुविष्यति आदि । **लोट्मा** नुवतु आदि । **लङ्मा** अनुवत् आदि । **विधिलिङ्मा** नुवेत् आदि । **आशीर्लिङ्मा** नूयात् आदि । **लुङ्मा** अनुवीत् आदि । **लृङ्मा** अनुविष्यत् आदि रूप हुन्छन् ।

**टुमस्जो** धातु शुद्ध हुनु, स्नान गर्नु, डुब्नु अर्थमा छ । टु र ओको इत्संज्ञा लोप हुन्छ, मस्ज् बाँकी रहन्छ । यो धातु परस्मैपदी हो । (अनिट् अकर्मक )

**मज्जति**– मस्ज् लट्, तिप्, श, 'मस्ज्+अति', सकारको "स्तोः श्चुना श्चुः"ले तालव्य शकार, शकारका स्थानमा "झलां जश् झशि"ले जकार भयो, 'मज्जति' सिद्ध भयो । यस्तै प्रकारले मज्जतः, मज्जन्ति आदि रूप हुन्छन् ।

**ममज्ज**– लिट्मा 'मस्ज्+मस्ज्+अ', 'ममस्ज्+अ', श्चुत्व, जश्त्व भयो, 'ममज्ज' सिद्ध भयो । यस्तै प्रकारले अतुस् उस्मा ममज्जतुः, ममज्जुः रूप हुन्छन् ।

**ममज्जिथ**– थल्मा 'मस्ज्+थ', यहाँ "आर्धधातुकस्येड्०"ले पाएको इट् आगम "एकाच०"ले निषेध भयो, "कृसृभृवृ०" नियमले इट् आगम पाएकोमा "उपदेशेऽत्वतः"ले निषेध भयो, "ऋतो भारद्वाजस्य" यो नियम लाएर वैकल्पिक इट् आगम भयो, 'मस्ज्+इथ', द्वित्वादि भयो, 'ममज्जिथ' सिद्ध भयो ।

**मस्जिनशोरिति**– इट् नभएको पक्षमा "मस्जिनशोर्झलि"ले नुम् हुन्छ ।

**(वा०) मस्जेरिति**– मस्ज् धातुको अन्त्यवर्णदेखि पूर्व नुम् आगम होस् भन्नू । यस वार्तिकले जकारदेखि पूर्व नुम् हुन्छ । संयोगादिलोप हुन्छ ।

**ममङ्क्थ**– इट् नभएका पक्षमा 'मस्ज्+थ', यहाँ द्वित्वादि भयो, 'ममस्ज्+थ' भयो,

मङ्क्ता । मङ्क्ष्यति । अमाङ्क्षीत् । अमाङ्क्ताम् । अमाङ्क्षुः ॥ **रुजो भङ्गे** ॥३३॥ रुजति । रोक्ता । रोक्ष्यति । अरौक्षीत् ॥

---

"मस्जिनशोर्झलि"ले नुम् भयो अनुबन्धलोप भएर न् भयो, "मिदचोऽन्त्यात्परः" लगाएर मकार अकारदेखि पर पाएमा "मस्जेरन्त्यात्पूर्व०"ले मस्जधातुको अन्त्यवर्णदेखि पूर्वतर्फ नुम् होस् भनेकोले ज देखि पूर्व सदेखि पर नुम्आगम 'न्' भएपछि 'ममस्+न्+ज+थ', स्कोः संयोगाद्योःले सकारको लोप भयो, 'ममन्+ज्+थ' भयो, जकारको "चोःकुः"ले कुत्व, चर्त्व, नकारको अनुस्वार, परसवर्ण भयो, 'ममङ्क्थ' सिद्ध भयो ।

बाँकी रूप- ममज्जथुः, ममज्ज । ममज्ज, ममज्जिव, ममज्जिम ।

**मङ्क्ता**- लुट्मा 'मस्ज्+तास्+आ' यहाँ तासिको इट् आगमको निषेध भएपछि "मस्जिनशो०"ले नुम् भयो, "मस्जेरन्त्यात्पूर्वो०" यो वार्तिकले जकारदेखि पूर्वतर्फ नुम् आगम 'न्' भयो, 'मस्न्ज्+तास्+आ', यहाँ सकारको संयोगादिलोप, जकारको कुत्व, चर्त्व, नकारको अनुस्वार, परसवर्ण भयो । 'मङ्क् तास्+आ', टिलोप भयो, 'मङ्क्ता' सिद्ध भयो ।

**मङ्क्ष्यति**- 'मस्ज्+स्यति', यहाँ स्य प्रत्ययको इट्निषेध भएपछि, "मस्जिनशोर्झलि"ले "मस्जेरन्त्यात्पूर्वो०" यो वार्तिक लगाएर जकारदेखि पूर्वतर्फ नुम् भयो, 'मस्न्ज्+स्यति' भयो, "स्कोः संयोगाद्योः०"ले संयोगादि सकारको लोप भयो, 'मन्ज्+स्यति' यहाँ "चोःकु"ले जकारको कुत्व भएर गकार, गकारको चर्त्व भएर ककार भयो, 'मन्क्+स्यति', षत्व, ककार षकार संयोग भएर, क्षत्व भयो, 'मन्+क्ष्यति', नकारको अनुस्वार परसवर्ण भयो, 'मङ्क्ष्यति' सिद्ध भयो ।

**लोट्मा**- मज्जतु । **लङ्मा** अमज्जत् । **विधिलिङ्मा** मज्जेत् । **आशीर्लिङ्मा** मज्यात् ।

**अमाङ्क्षीत्**- लङ्मा 'अमस्ज्+स्+ईत्' यहाँ "मस्जिनशोर्झलि" ले नुम् भयो, संयोगादि सकारको लोप भयो, 'अमन्ज्+स्+ईत्' यहाँ "वदव्रज०"ले वृद्धि, कुत्व, चर्त्व, षत्व, नकारको अनुस्वार, परसवर्ण, ककार, षकार मिलेर क्ष भयो, 'अमाङ्क्षीत्' सिद्ध भयो ।

**अमाङ्क्ताम्**- लुङ् तस्मा 'अमस्ज्+स्+ताम्' यहाँ पूर्ववत् नुम्, संयोगादि सकारको लोप, वृद्धि, "झलो झलि"ले सिच्का सकारको लोप 'अमान्ज्+ताम्', कुत्व, चर्त्व, नकारको अनुस्वार परसवर्ण भयो, 'अमाङ्क्ताम्' सिद्ध भयो ।

**अमाङ्क्षुः**-'अमस्ज्+स्+उस्' यहाँ नुम्, संयोगादि सकारको लोप, वृद्धि, 'अमान्+ज्+स्+उस्', कुत्व, चर्त्व, षत्व, नकारको अनुस्वार, परसवर्ण, 'अमांङ्क्षुः' सिद्ध भयो । अरू बाँकी रूपहरू- अमाङ्क्षीः, अमाङ्क्तम्, अमाङ्क्त । अमाङ्क्षम् अमाङ्क्ष्व, अमाङ्क्ष्म ।

**लृङ्मा** अमङ्क्ष्यत् आदि रूप हुन्छन् ।

**रुजो**धातु भाँच्नु अर्थमा छ । ओकारको इत्संज्ञा लोप हुन्छ । (अनिट् सकर्मक)

**लट्मा** रुजति । **लिट्मा** रुरोज आदि रूप हुन्छन् ।

**रोक्ता**- लुट्मा 'रुज्+तास्+ति', इट्को निषेध, डा आदेश, 'रुज्+तास्+आ', 'रुज्+ता', गुण, 'रोज्+ता' कुत्व, चर्त्व, 'रोक्ता' सिद्ध भयो । यस्तै प्रकारले रोक्तारौ, रोक्तारः आदि रूप जान्नु ।

**रोक्ष्यति**- लृट्मा 'रुज्+स्यति' स्य प्रत्ययको इट् आगमको निषेध, गुण, रोज्, स्यति, कुत्व, चर्त्व, षत्व, क्षत्व भयो, 'रोक्ष्यति' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप सिद्ध गर्नु । **लोट्मा** रुजतु । **लङ्मा** अरुजत् । **विधिलिङ्मा** रुजेत् । **आशीर्लिङ्मा** रुज्यात् आदि रूप हुन्छन् ।

**अरौक्षीत्**- लुङ्मा 'अरुज्+स्+ईत्', यहाँ "वदव्रज०"ले वृद्धि, 'अरौज्+स्+ईत्', कुत्व, चर्त्व, षत्व, क्षत्व भयो, 'अरौक्षीत्' सिद्ध भयो । सबै रूप तल दिइन्छ-

---

**भुजो** कौटिल्ये ॥३४॥ रुजिवत् ॥ **विश** प्रवेशने ॥३५॥ विशति ॥ **मृश** आमर्शने ॥३६॥ आमर्शनं स्पर्शः ॥ "अनुदात्तस्य चर्दुपधस्यान्तरस्याम्" ।

| **रुज् लुङ्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अरौक्षीत् | अरौक्ताम् | अरौक्षुः |
| | मध्यमपुरुष | अरौक्षीः | अरौक्तम् | अरौक्त |
| | उत्तमपुरुष | अरौक्षम् | अरौक्ष्व | अरौक्ष्म |

**लृङ्मा** अरोक्ष्यत् आदि रूप हुन्छन् ।

**भुजो** धातु बाङ्गो हुनु अर्थमा छ । ओकारको इत्संज्ञा र लोप हुन्छ । (अनिट् अकर्मक) अनुदात्त धातुको प्रकरणमा भुज् यो सामान्यतया निर्देश गरेको हुनाले **भुज** पालनाभ्यवहारयोः० र यो समेत दुवै धातु अनुदात्त धातुमा परिगणित छन् । अतः यो पनि अनिट् धातु हो । यो धातु रुज् धातु जस्तै हो । रुज् धातुका जस्तै रूप हुन्छन् । साधनप्रक्रिया पनि सबै त्यस्तै हो ।

टुमस्जो, भुजो, रुजो, यी तीनै धातु ओदित् अर्थात् ओकारको इत्संज्ञा हुने हुनाले निष्ठा संज्ञक प्रत्ययमा तकारको नकार हुन्छ र- मग्नः, मग्नवान् । भुग्नः, भुग्नवान् । रुग्णः, रुग्णवान् । यस्ता रूप हुन्छन् ।

**विश** धातु प्रवेश गर्नु अर्थमा छ । अकार इत्संज्ञक छ । यो धातु परस्मैपदी हो । (अनिट्, सकर्मक)

**लट्मा**– विशति आदि । **लिट्मा**– विवेश आदि रूप हुन्छन् ।

**अविक्षत्**– लुङ्मा "शल इगुपधादनिटः क्सः" ले च्लिका स्थानमा क्स हुन्छ र 'अविक्षत्' सिद्ध हुन्छ । त्यस्तै प्रकारले अरू रूप पनि सिद्ध हुन्छन् । **लृङ्मा** अवेक्ष्यत् आदि रूप हुन्छन् ।

उपसर्ग योगमा अर्थको भिन्नता-

प्रविशति (प्रवेश गर्छ), संविशति (सुत्छ) निविशते (प्रवेश गर्छ)

यहाँ "नेर्विशः"ले आत्मनेपद हुन्छ । यसको उदाहरण– "निविशते यदि शूकशिखा पदे **सृजति** सा कियतीमिव न व्यथाम्" (नैषधीय ४।११) आदि छन् ।

**मृश** धातु छुनु, मुसार्नु अर्थमा छ । (अनिट् सकर्मक ) यहाँ आमर्शन भनेको स्पर्श गर्नु, अर्थात् छुनु हो । यो धातु परस्मैपदी हो । **लट्मा** मृशति आदि रूप हुन्छन् । **लिट्मा** क्रादिनियमले नित्य इट् आगम हुन्छ, थल्, व, ममा क्रमशः ममर्शिथ । ममृशिव । ममृशिव यी रूप हुन्छन् । अरू रूपहरू आफै स्मरण गर्नू ।

**अनुदात्तस्येति**– "अनुदात्तस्य चर्दुपधस्यान्यतस्याम्"ले अम् आगम हुन्छ ।

**म्रष्टा/मर्ष्टा**- लुट्मा 'मृश्+तास्+आ', 'मृश्+ता', अम् आगम, यण्, "व्रश्चभ्रस्ज०"ले शान्तत्वात् षत्व, ष्टुत्व, 'म्रष्टा' सिद्ध भयो । अम् नभएका पक्षमा लघूपध गुण भयो, 'मर्श्+ता' पूर्ववत् षत्व, ष्टुत्व, 'मर्ष्टा' सिद्ध भयो ।

**म्रक्ष्यति/मर्क्ष्यति**- लृट्मा 'मृश्+स्यति' यहाँ अम्, यण् "व्रश्चभ्रस्ज०"ले षत्व, कत्व, "आदेशप्रत्यययोः"ले षत्व, क्षत्व, 'म्रक्ष्यति' सिद्ध भयो । अम् आगम नभएको पक्षमा लघूपधगुण "व्रश्चभ्रस्ज०"ले षत्व, कत्व, "आदेशप्रत्यययोः"ले षत्व, क्षत्व भयो, 'मर्क्ष्यति' सिद्ध भयो ।

लोट आदि लकारमा क्रमशः- मृशतु । अमृशत् । मृशेत् । मृश्यात् आदि रूप हुन्छन् ।

**लुङ्मा**– "स्पृशमृशकृषतृपदृपां०"ले क्सलाई बाधेर वैकल्पिक सिच् हुन्छ । सिच् नभएको पक्षमा क्स हुन्छ । सिच् भएको पक्षमा वैकल्पिक अम् आगम हुन्छ । क्स भएको पक्षमा क्स कित् हुनाले अम् आगम हुँदैन । तीन थरी रूप हुन्छन् ।

अम्राक्षीत्, अमार्क्षीत्, अमृक्षत् ॥ **षद्लृ** विशरणगत्यवसादनेषु ॥३७॥ सीदतीत्यादि ॥

---

**अम्राक्षीत/अमार्क्षीत्-** लुङ्मा "शल इगुपधात्०"लाई बाधेर "स्पृशमृश०"ले वैकल्पिक सिच् भएको पक्षमा 'अमृश्+स्+ईत्' यहाँ "अनुदात्तस्य चर्दुपधस्य०"ले अम् आगम भयो, यण् भयो, 'अम्रश्+स+ईत्', "वदव्रज०"ले वृद्धि भयो, 'अम्राश्+स्+ईत्', "व्रश्चभ्रस्ज०"ले षत्व भयो, 'अम्राष्+स्+ईत्', "षढोः कः सि"ले कत्व भयो, 'अम्राक्+स+ईत्' "आदेशप्रत्यययोः"ले षत्व, 'अम्राक्ष्+ईत्', ककार षकार संयोग भएर क्षकार भयो, 'अम्राक्षीत्' सिद्ध भयो । अम् नभएका पक्षमा 'अमृश्+स्+ईत्', यहाँ "वदव्रज०"ले आर्वृद्धि भयो, 'अमार्श्+स्+इत्', पूर्ववत् "व्रश्च भ्रस्ज०"ले षत्व, अनि कत्व, षत्व, क्षत्व भयो, 'अमार्क्षीत्' सिद्ध भयो । यस्तै प्रकारले तस, झि आदि अरू सबै विभक्तिमा पनि दुई दुई रूप हुन्छन् । यहाँ अम् आगम भएका पक्षका रूप र नभएका पक्षका रूपहरू अलग-अलग दिइन्छ ।

मृश लुङ् (सिच् भएमा अम् आगम भएको पक्षमा)-

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | अम्राक्षीत् | अम्राष्टाम् | अम्राक्षुः |
| मध्यमपुरुष | अम्राक्षीः | अम्राष्टम् | अम्राष्ट |
| उत्तमपुरुष | अम्राक्षम् | अम्राक्ष्व | अम्राक्ष्म |

मृश लुङ् (सिच् भएमा अम् आगम नभएको पक्षमा)-

| | | | |
|---|---|---|---|
| प्रथमपुरुष | अमार्क्षीत् | अमार्ष्टाम् | अमार्क्षुः |
| मध्यमपुरुष | अमार्क्षीः | अमार्ष्टम् | अमार्ष्ट |
| उत्तमपुरुक्ष | अमार्क्षम् | अमार्क्ष्व | अमार्क्ष्म |

**अमृक्षत्-** "स्पृशमृशकृप०"ले सिच् नभएको पक्षमा 'अमृश्+च्लि+ति', यहाँ "शल इगुपधादनिटः०"ले क्स प्रत्यय भयो, 'अमृश्+स+ति', यहाँ धातुका शकारको "व्रश्चभ्रस्ज०"ले षत्व, कत्व भयो, क्सका सकारको "आदेशप्रत्यययोः"ले षत्व, क्षत्व, भयो, 'अमृक्षत्' भयो । यस्तै अरू रूप पनि हुन्छन् ।

मृश् लुङ् (क्स प्रत्यय भएको पक्षमा)-

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | अमृक्षत् | अमृक्षताम् | अमृक्षन् |
| मध्यमपुरुष | अमृक्षः | अमृक्षतम् | अमृक्षत |
| उत्तमपुरुष | अमृक्षम् | अमृक्षाव | अमृक्षाम |

**षद्लृ** धातु दुःख पाउनु, हिंड्नु, मर्नु अर्थमा छ । (अनिट् अर्थवैविध्यले सकर्मक, अकर्मक दुवै ।) लृको इत्संज्ञा, लोप हुन्छ । आदिका षकारको "धात्वादेः षः सः"ले दन्त्य सकार हुन्छ । यो धातु परस्मैपदी हो, शित् प्रत्यय पर भएमा "पाघ्राध्मा०"ले सद्का स्थानमा सीद आदेश हुन्छ ।

**सीदति-** सद् धातुदेखि लट्, तिप्, श प्रत्यय भएर 'सद्+अति' यहाँ, "पाघ्राध्मा०"ले सीद आदेश भयो, 'सीद+अति', "अतो गुणे"ले पररूप भयो, 'सीदति' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध गर्नू । कित् लिट् र सेट् थल्मा अभ्यासको लोप हुन्छ । लिट्का सबै रूप तल दिइन्छ-

**शद्लृ** शातने ॥३८॥

**६५९. शदेः शितः १।३।६०॥**

शिद्भाविनोऽस्मात्तङानौ स्तः । शीयते । शीयताम् । अशीयत । शीयेत । शशाद । शत्ता । शत्स्यति । अशदत् । अशत्स्यत् ॥ **कॄ** विक्षेपे ॥३९॥

**६६०. ॠत इद्धातोः ७।१।१००॥**

ॠदन्तस्य धातोरङ्गस्य इत्स्यात् ।

---

| **सद् लिट्-** | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | ससाद | सेदतुः | सेदुः |
| | मध्यमपुरुष | सेदिथ/ससत्थ | सेदथुः | सेद |
| | उत्तमपुरुष | ससाद/ससद | सेदिव | सेदिम |

**लुट्मा** सत्ता । **लृट्मा** सत्स्यति । **लोट्मा** सीदतु । **लङ्मा** असीदत् । **विधिलिङ्मा** सीदेत् । **आशीर्लिङ्मा** सद्यात् **लुङ्मा** लृकारको इत्संज्ञा भएको हुनाले अङ् असदत् । **लृङ्मा** असत्स्यत् आदि रूप हुन्छन् ।

**उपसर्गको योगमा–**

प्रसीदति (प्रसन्न हुन्छ) अवसीदति (दुःख पाउँछ)
निषीदति (बस्छ) विषीदति (विषाद गर्छ)
प्रत्यासीदति (जोडिन्छ) आसीदति (प्राप्त हुन्छ, पाउँछ)

**शद्लृ** धातु तिखार्नु, ताछ्नु अर्थमा छ । लृकारको इत्संज्ञा लोप हुन्छ । यो धातु शित् प्रत्ययको विषयमा आत्मनेपदी र अन्यत्र परस्मैपदी हो । (अनिट्, सकर्मक )

**शदेरिति–** शित् प्रत्ययको प्रकृतिभूत शद् धातुदेखि तङ् र आन होऊन् ।

**शीयतमिति–** वृत्तिमा शित् प्रत्यय हुने स्थलमा अर्थात् सार्वधातुक लकारमा आत्मनेपद हुन्छ भन्ने कुरा बुझाउन दिग्दर्शनार्थ लट्, लोट्, लङ् र विधिलिङ्का एक-एक रूपहरू पहिले दिइएको छ । अनिमात्र आर्धधातुक लकार- लिट्, लुट्, लृट्, आशीर्लिङ्, लुङ् र लृङ्का एक-एक रूप दिइएको छ । यो लकारको क्रमव्यत्यय नसम्झनु । आत्मनेपद हुने र परस्मैपद हुने स्थलको पृथक-पृथक, निर्देश गरेको पाठकहरूलाई बुझ्न सजिलो होस् भन्ने ध्येयले हो ।

**शीयते–** शद् धातुदेखि लट् लकार भयो, शित् प्रत्ययको श को प्रकृति भएकोले लकारका स्थानमा तङ्को प्रथमपुरूषको एकवचन त भयो, 'शद्+त' श प्रत्यय भयो, 'शद्+अ+त' भयो, एत्व भयो, "पाघ्राध्मा०"ले शद्का स्थानमा शीय् आदेश भयो, "अतो गुणे"ले पररूप भयो, 'शीयते' सिद्ध भयो । यस्तै प्रकारले शीयेते, शीयन्ते आदि रूप हुन्छन् ।

लट् लकारमा जस्तै आत्मनेपद, शीय् आदेश भएर **लोट्मा** शीयताम् **लङ्मा** अशीयत **विधिलिङ्मा** शीयेत आदि रूप हुन्छन् ।

**लिट्मा** शशाद, शेदतुः, शेदुः आदि । **लुट्मा** शत्ता आदि । **लृट्मा** शत्स्यति आदि । **लुङ्मा** लृदित् धातु हुनाले "पुषादिद्युताद्य०"ले अङ् हुन्छ । अशदत् आदि र **लृङ्मा** अशत्स्यत् आदि रूप हुन्छन् ।

**कॄ** धातु फ्याक्नु अर्थमा छ । यो धातु परस्मैपदी हो । (सेट् सकर्मक )

**ॠत इदिति–** दीर्घ ॠकारान्त धातुका अङ्गका स्थानमा ह्रस्व इकार आदेश होस् । "उरण् रपरः" लगाएर इर् आदेश हुन्छ ।

किरति । चकार । चकरतुः । चकरुः । करीता, करिता । कीर्यात् ॥

**६६१. किरतौ लवने ६।१।१४०॥**

उपात्किरतेः सुट् छेदने । उपस्किरति ।

---

**किरति-** कॄ धातुदेखि लट्, तिप्, शप्लाई बाधेर श, 'कॄ+अ+ति' शमा ङित्त्व हुनाले गुणनिषेध भयो, अनि "ऋृत इद् धातोः"ले ऋृकारका स्थानमा इकार हुँदा "उरण् रपरः" लाएर इर् आदेश भयो, 'किर्+अति'- 'किरति' सिद्ध भयो । यस्तै प्रकारले किरतः, किरन्ति आदि रूप हुन्छन् ।

**चकार-** लिट्मा 'कॄ+अ', 'कॄ+कॄ +अ', ह्रस्व 'कृ+कॄ+अ', "उरत्", 'कर्+कॄ+अ', हलादि शेष, 'क+कॄ+अ', चुत्व, 'चकॄ+अ', "सार्वधातुकार्धधातुकयोः"लाई बाधेर "अचोऽञ्णिति"ले वृद्धि पायो, त्यसलाई बाधेर "ऋच्छत्यृताम्"ले गुण भयो, 'चकर्+अ' "अत उपधायाः"ले वृद्धि भयो,[९३] 'चकार' सिद्ध भयो ।

**चकरतुः-** अतुस्मा 'चकॄ+अतुस्' भएपछि "सार्वधातुका०"ले गुण पाएको "क्ङिति च"ले निषेध भयो, त्यसलाई बाधेर "ऋच्छत्यृताम्"ले अर्‌गुण भयो, 'चकरतुः' सिद्ध भयो । यस्तै प्रकारले चकरुः आदि रूप पनि सिद्ध हुन्छन् ।

कित् लिट्मा निषेधलाई बाधेर गुण नगर्ने हो भने "ऋच्छत्यॄताम्" सूत्र पढ्नु व्यर्थ हुन्छ । अतः निषेधलाई यसले बाध्दछ । सबै रूप-

| **कॄ लट्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | चकार | चकरतुः | चकरुः |
| | मध्यमपुरुष | चकरिथ | चकरथुः | चकर |
| | उत्तमपुरुष | चकार/चकर | चकरिव | चकरिम |

उत्तमपुरुष णल्मा णित् पक्षमा "ऋच्छत्यॄताम्"ले गुण भएपछि "अत उपधायाः"ले वृद्धि हुन्छ । लुट्मा र लृट्मा इट्को "वृतो वा"ले वैकल्पिक दीर्घ हुन्छ र दुई दुई रूप हुन्छन् ।

**लुट्मा** करीता, करिता आदि । **लृट्मा** करीष्यति-करिष्यति आदि । **लोट्मा** किरतु-किरतात् आदि । **लङ्मा** अकिरत् आदि । **विधिलिङ्मा** किरेत् आदि रूप हुन्छन् ।

**आशीर्लिङ्मा-** गुण निषेध भएपछि "ऋृत इद्धातोः"ले इर् हुन्छ "हलि च"ले उपधादीर्घ हुन्छ । कीर्यात् आदि रूप हुन्छन् ।

**लुङ्मा-** "सिचि वृद्धि परस्मैपदेषु"ले वृद्धि हुन्छ । इट्को "वॄतो वा"ले दीर्घ पाएमा "सिचि च परस्मैपदेषु"ले निषेध हुन्छ ।

| **कॄ लुङ्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अकारीत् | अकारिष्टाम् | अकारिषुः |
| | मध्यमपुरुष | अकारीः | अकारिष्टम् | अकारिष्ट |
| | उत्तमपुरुष | अकारिषम् | अकारिष्व | अकारिष्म |

**किरताविति-** उप शब्ददेखि पर रहेका कॄ धातुको सुट् आगम होस् काट्नु अर्थ बुझिँदामा ।

**उपस्किरति-** उप शब्द पूर्वमा हुने कॄ धातुको लट् प्रथमपुरूष एकवचनमा उपकिरति

---

९३ णिति पूर्वविप्रतिषेधेन "अचोञ्णिति" इति वृद्धिः । कृते वा गुणे "अत उपधायाः" इति वृद्धिरिति माधवीयधातुवृत्तौ ।

**वा**.(अडभ्यासव्यवायेऽपि सुट् कात् पूर्व इति वक्तव्यम्)। उपास्किरत्। उपचस्कार॥

**६६२. हिंसायां प्रतेश्च ६।१।१४१॥**

उपात्प्रतेश्च किरतेः सुट् स्यात् हिंसायाम्। उपस्किरति। प्रतिस्किरति॥ **गॄ** निगरणे॥४०॥

**६६३. अचि विभाषा ८।२।२१**

गिरतेरेफस्य लो वाऽजादौ प्रत्यये। गिरति, गिलति। जगार, जगाल। जगरिथ, जगलिथ। गरीता, गरिता, गलीता, गलिता॥

---

भएपछि "किरतौ लवने"ले कॄ धातुको सुट् आगम टित्त्वाद् आदि पट्टि भयो, 'उपस्किरति' सिद्ध भयो।

(**वा**.) **अडभ्यासेति**– अट् आगम र अभ्यासले व्यवधान भए पनि सुट् आगम ककारदेखि पूर्वपट्टि होस् भन्नू।

**उपास्किरत्, उपचस्कार**– उप शब्दपूर्वक कॄ धातुको लङ्मा उपाकिरत् र लिट्मा उपचकार भएपछि यहाँ "किरतौ लवने"ले उपदेखि अव्यवहितपर सुट् पाएकोमा "अडभ्यासव्यवायेऽपि०" यो वार्तिक लगाएर ककारदेखि पूर्वतर्फ सुट् भयो, 'उपास्किरत्', 'उपचस्कार' सिद्ध भयो।

**हिंसायामिति**– उपशब्द र प्रति शब्ददेखि पर रहेका कॄ धातुको सुट् आगम होस्, हिंसा अर्थ बुझिँदामा।

**उपस्किरति, प्रतिस्किरति**– उपकिरति, प्रतिकिरति, यी दुवै स्थानमा हिंसा अर्थमा "हिंसायां प्रतेश्च"ले सुट् भयो, 'उपस्किरति', 'प्रतिस्किरति' सिद्ध भयो। "अडभ्यासव्यवायेऽपि०" यो वार्तिक यस सूत्रमा पनि लाग्दछ।

"स मुग्धकान्तास्तनसङ्गभङ्गुरैरुरोविदारं प्रतिचस्करे नखैः" (माघ १।४७) 'प्रतिचस्करे' यहाँ कर्ममा लकार भएको हुनाले आत्मनेपद भएको हो।

गॄ धातु निल्नु अर्थमा छ। यो धातु परस्मैपदी हो। (सेट्, सकर्मक)

**अचीति**–गॄ धातुका रेफका स्थानमा लकार आदेश होस्, अच् आदिमा हुने प्रत्यय पर भएमा।

**गिलति/गिरति**– लट्मा 'गॄ+अ+ति' यहाँ, "ॠत इद् धातोः"ले ॠकारका स्थानमा इर् भयो, 'गिर्+अति', "अचि विभाषा"ले रेफका स्थानमा वैकल्पिक लकार भयो, 'गिलति' सिद्ध भयो। लकार नभएको पक्षमा 'गिरति' सिद्ध भयो।

गॄ लट् (लत्व भएको पक्षमा) -

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुक्ष | गिलति | गिलतः | गिलन्ति |
| मध्यमपुरुष | गिलसि | गिलथः | गिलथ |
| उत्तमपुरुष | गिलामि | गिलावः | गिलामः |

**गॄ लट् (लत्व नभएको पक्षमा)** -

| | | | |
|---|---|---|---|
| प्रथमपुरुष | गिरति | गिरतः | गिरन्ति |
| मध्यमपुरुष | गिरसि | गिरथः | गिरथ |
| उत्तमपुरुष | गिरामि | गिरावः | गिरामः |

**लिट्मा** कॄ धातुमा जस्तै जगार भएपछि लत्व भएको पक्षमा जगाल आदि रूप हुन्छन् र नभएको पक्षमा जगार आदि रूप हुन्छन्। **लुट्मा** लत्व भएको दीर्घ भएको पक्षमा गलीता आदि।

---

**प्रच्छ** ज्ञीप्सायाम् ॥४१॥ ग्रहिज्येति सम्प्रसारणम् । प्रच्छति । पप्रच्छ । पप्रच्छतुः । पप्रच्छुः । प्रष्टा । प्रक्ष्यति । अप्राक्षीत् ॥

---

लत्व भएको दीर्घ नभएको पक्षमा गलिता आदि । लत्व नभएको दीर्घ भएको पक्षमा गरीता आदि । लत्व नभएको दीर्घ नभएको पक्षमा गरिता आदि गरेर चार थरी रूप हुन्छन् । **लृट्मा** पनि यस्तै प्रकारले गलीष्यति, गलिष्यति, । गरीष्यति, गरिष्यति । आदि यी चारथरी रूप हुन्छन् । **लोट्मा** गिलतु गिरतु आदि । **लङ्मा** अगिलत्, अगिरत् आदि । **विधिलिङ्मा** गिलेत् गिरेत् आदि रूप हुन्छन् । **आशीर्लिङ्मा** अजादि प्रत्यय पर न हुनाले लत्व हुँदैन । "हलि च"ले दीर्घ हुन्छ र गीर्यात् आदि रूप हुन्छन् । **लुङ्मा** अगालीत्, अगारीत् आदि रूप हुन्छन् । यहाँ "वॄतो वा"ले पाएको इट् आगमको दीर्घ पाएमा "सिचि च परस्मैपदेषु"ले निषेध हुन्छ । **लृङ्मा** अगलीष्यत्, अगलिष्यत् । अगरीष्यत्, अगरिष्यत् आदि रूप हुन्छन् ।

उपसर्ग योगमा अर्थको भिन्नता-

संगिरते[९४] (प्रतिज्ञा गर्छ) निगिलति (निल्छ) उद्गिरति (ओकेल्छ, उद्गार दिन्छ)

**प्रच्छ** धातु जान्नको इच्छा गर्नु, सोध्नु अर्थमा छ । यो धातु परस्मैपदी हो । (अनिट्, सकर्मक)

**ग्रहिज्येति-** "ग्रहिज्या"ले संप्रसारण हुन्छ ।

**पृच्छति-**प्रच्छ धातुदेखि लट्, तिप्, शप्लाई बाधेर श प्रत्यय भयो, 'प्रच्छ+अ+ति', सम्प्रसारण 'पृ+अच्छ्+अ+ति', "संप्रसारणाच्च"ले पूर्वरूप 'पृच्छ्+अति', पररूप भयो, 'पृच्छति' सिद्ध भयो ।

**पप्रच्छ-** लिट्मा 'प्रच्छ+अ', 'प्रच्छ+प्रच्छ+अ', 'पप्रच्छ' सिद्ध भयो । यस्तै प्रकारले पप्रच्छतुः । पप्रच्छुः यी रूप हुन्छन् । अतुस्, उस् संयोगदेखि पर हुनाले कित् छैनन् र सम्प्रसारण हुँदैन ।

**पप्रच्छिथ/पप्रष्ठ-** 'प्रच्छ+थ' यहाँ सबै बाध्यबाधकभावानन्तर "ऋतो भारद्वाजस्य"ले वैकल्पिक इट्, द्वित्वादि भयो, 'पप्रच्छिथ' सिद्ध भयो । इट् नभएको पक्षमा पनि द्वित्वादि भएर 'पप्रच्छ+थ', भएपछि "व्रश्चभ्रस्ज०"ले छकारका स्थानमा षकार "निमित्तापाये नैमित्तिकस्याप्यपायः" लाएर चकारको लोप, ष्टुत्व भयो, 'पप्रष्ठ' सिद्ध भयो । यस्तै प्रकारले पप्रच्छथुः, पप्रच्छ यी रूप हुन्छन् ।

**पप्रच्छिव, पप्रच्छिम-** व, म,मा क्रादिनियमले नित्य इट् हुन्छ र उक्त रूप सिद्ध हुन्छ ।

**प्रष्टा-** लुट्मा 'प्रच्छ+तास्+आ', 'प्रच्छ्+ता', "व्रश्चभ्रस्ज०"ले षत्व, ष्टुत्व भयो, 'प्रष्टा' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध गर्नू ।

| प्रच्छ लुट्- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | प्रष्टा | प्रष्टारौ | प्रष्टारः |
| | मध्यमपुरक्ष | प्रष्टासि | प्रष्टास्थः | प्रष्टास्थ |
| | उत्तमपुरुष | प्रष्टास्मि | प्रष्टास्वः | प्रष्टास्मः |

**प्रक्ष्यति-** लृट्मा 'प्रच्छ्+स्यति', षत्व, 'प्रष्+स्यति', कत्व, प्रक्स्यति, षत्व, 'प्रक्+ष्यति', क्षत्व भयो, 'प्रक्ष्यति' सिद्ध भयो । **लोट्मा** पृच्छतु आदि । **लङ्मा** अपृच्छत् आदि । **विधिलिङ्मा** पृच्छेत् आदि । आशीर्लिङ्मा पृच्छ्यात् आदि रूप हुन्छन् ।

**अप्राक्षीत्-** लुङ्मा 'अप्रच्छ+स्+ईत्' यहाँ "वदव्रज०"ले वृद्धि, 'अप्राच्छ्+स्+ईत्', "व्रश्चभ्रस्ज०"ले षत्व, 'अप्राष्+स्+ईत्', "षढोः कः सि"ले कत्व, 'अप्राक्+स्+ईत्', षत्व, क्षत्व भयो, 'अप्राक्षीत्' सिद्ध भयो ।

---

९४ "समः प्रतिज्ञाने"ले आत्मनेपद हुन्छ ।

**मृङ्** प्राणत्यागे ॥४२॥

६६४. **म्रियतेर्लुङ्लिङोश्च १।३।६१॥**

लुङलिङोः शितश्च प्रकृतिभूतान्मृङस्तङ् नान्यत्र । रिङ् । इयङ् । म्रियते । ममार । मर्ता ।

---

**अप्राष्टाम्**– 'अप्राच्छ्+स्+ताम्', "झलो झलि"ले सकारको लोप, "व्रश्चभ्रस्ज०"ले षत्व, ष्टुत्व भयो, 'अप्राष्टाम्' सिद्ध भयो । यस्तै प्रकारले व्रश्चधातुमा जस्तै अरू रूप पनि हुन्छन् । सबै रूप तल दिइन्छ-

| **प्रच्छ लुङ्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अप्राक्षीत् | अप्राष्टाम् | अप्राक्षुः |
| | मध्यमपुरुष | अप्राक्षीः | अप्राष्टम् | अप्राष्ट |
| | उत्तमपुरुष | अप्राक्षम् | अप्राक्ष्व | अप्राक्ष्म |

**लृङ्**– अप्रक्ष्यत्, अप्रक्ष्यताम्, अप्रक्ष्यन् आदि रूप हुन्छन् ।

**मृङ्** धातु प्राणत्याग गर्नु (मर्नु) अर्थमा छ । यो धातु लिट्, लुट्, लृट् र लृङ्मा परस्मैपदी, अन्यत्र आत्मनेपदी धातु हो । (अनिट् अकर्मक)

**म्रियतेरिति**– लुङ्, लिङ् र शित् प्रत्ययको प्रकृति भूत मृङ् धातुदेखि आत्मनेपद होस्, अन्यत्र नहोस् । शित्को प्रकृति भन्नाले यहाँ श प्रत्यय हुने सार्वधातुक लकार संझनु पर्छ ।

**रिङिति**– "रिङ् शयग्लिङ्क्षु"ले रिङ् आदेश भएपछि इयङ् आदेश हुन्छ ।

**म्रियते**– मृ धातु लट् भयो, 'मृ+ल्' भयो, लकारका स्थानमा "अनुदात्तङितः"ले आत्मनेपद पाएकोमा "म्रियतेर्लुङ्लिङोश्च"ले लुङ्, लिङ् र शित्को प्रकृति भएको मृ धातुदेखि आत्मनेपद होस् भनेकोले यहाँ शित् प्रत्यय 'श'को प्रकृतिभूत मृ धातु छ र लकारका स्थानमा तङ्, त भयो, एत्व भयो, श प्रत्यय भयो, 'मृ+अ+ते' यहाँ "रिङ् शयग्०"ले रिङ्आदेश "अनेकाल्०"लाई बाधेर "ङिच्च"ले अन्त्य अल् ऋकारका स्थानमा भयो, 'म्रि+अ+ते' इयङ् भयो, 'म्रियते' सिद्ध भयो । लट्का सबै रूप तल दिइन्छ-

| **मृ लट्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | म्रियते | म्रियेते | म्रियन्ते |
| | मध्यमपुरुष | म्रियसे | म्रियेथे | म्रियध्वे |
| | उत्तमपुरुष | म्रिये | म्रियावहे | म्रियामहे |

**ममार**– लिट् मृ धातुदेखि लिट् भयो, 'मृ+ल्' भयो, लकारका स्थानमा "अनुदात्तङितः"ले आत्मनेपद पाएकोमा "म्रियतेर्लुङ्लिङोश्च"ले लुङ्, लिङ् र शित्को प्रकृतिभूत मृ धातुदेखि तङ् होस्, अन्यत्र नहोस् भनेकोले यहाँ लुङ्, लिङ् र शितको प्रकृति मृ धातु नहुनाले तङ् भएन । नभएपछि "शेषात्कर्तरि०"ले परस्मैपद भयो, तिप्, णल्, 'मृ+अ' भयो, द्वित्व भयो, 'मृ+मृ+अ', 'मरमृ+अ', 'ममृ+अ', वृद्धि भयो, 'ममार' सिद्ध भयो । अन्यत्र पनि कृ धातुमा जस्तै प्रक्रिया हुन्छ र रूप सिद्ध हुन्छन् ।

**मर्ता**– लुट्मा मृ लुट्, 'मृ+ल्' यहाँ मृ धातु शित्को प्रकृति नहुनाले "म्रियतेर्लुङ् लिङोश्च"ले आत्मनेपद निषेध भयो र "शेषात्कर्तरि०"ले परस्मैपद भयो, 'मृ+ति', तासि प्रत्यय इट् आगमको निषेध 'मृतास्+ति', डाआदेश, 'मृ+तास्+आ', गुण, 'मर्तास्+आ', टिलोप भयो, 'मर्ता' सिद्ध भयो । जस्तै प्रकारले मर्तारौ, मर्तारः आदि रूप हुन्छन् ।

मरिष्यति । मृषीष्ट । अमृत ॥ **पृङ्** व्यायामे ॥४३॥ प्रायेणायं व्याङ्पूर्वः । व्याप्रियते । व्यापप्रे । व्यापप्राते । व्यापरिष्यते । व्यापृत । व्यापृषाताम् ॥ **जुषी** प्रतिसेवनयोः ॥४४॥ जुषते । जुजुषे ॥

---

**लृट्मा** "म्रियतेर्लुङ्लिङोश्च" यो नियमद्वारा आत्मनेपदनिषेध भएपछि परस्मैपद हुन्छ। "ऋद्धनोःस्ये"ले इट् आगम हुन्छ। मरिष्यति, मरिष्यतः, मरिष्यन्ति आदि रूप हुन्छन्। **लोट्मा** शित्को प्रकृतिभूत मृ धातु हुनाले तङ् हुन्छ। म्रियताम् आदि रूप हुन्छन्। **लङ्मा** अम्रियत, अम्रियेताम्, अम्रियन्त आदि रूप हुन्छन्। **विधिलिङ्मा** म्रियेत, म्रियेयाताम्, म्रियेरन् आदि रूप हुन्छन्। **आशीर्लिङ्मा** लिङ्को प्रकृतिभूत मृ धातु हुनाले शित्को प्रकृति नभए पनि तङ् हुन्छ। मृषीष्ट इत्यादि रूप हुन्छन्। यहाँ "उश्च" १।२।१२ ले लिङ्, कित् हुन्छ।

**अमृत**- लुङ्मा पनि लुङ्को प्रकृति मृ धातुदेखि "म्रियतेर्लुङ्लिङोश्च"ले आत्मनेपद त, च्लि, सिच्, सिच्को इट्को निषेध भयो, 'अमृ+स्+त', यहाँ "ह्रस्वादङ्गात्"ले सिच्को लोप भयो, 'अमृत' सिद्ध भयो। यस्तै प्रकारले थास्मा र ध्वम्मा पनि सिच्को लोप हुन्छ।ध्वम्का धकारको "इणः षीध्वं०" ले ढत्व हुन्छ।

| **मृ लुङ्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अमृत | अमृषाताम् | अमृषत |
| | मध्यमपुरुष | अमृथाः | अमृषाथाम् | अमृढ्वम् |
| | उत्तमपुरुष | अमृषि | अमृष्वहि | अमृष्महि |

**लृङ्मा** अमरिष्यत्, अमरिष्यताम्, अमरिष्यन् आदि रूप हुन्छन्। यहाँ पनि "ऋद्धनोः स्ये"ले इट् आगम हुन्छ।

**पृङ्** धातु कसरत गर्नु, कुनै काममा लागि रहनु अर्थमा छ। यो धातु आत्मनेपदी हो। (अनिट् अकर्मक)

**प्रायेणेति**- यो धातु प्रायः वि आङ् उपसर्ग पूर्वमा भएको नै प्रयोग हुन्छ।

**व्याप्रियते**- 'वि+आङ्', व्या शब्दपूर्वक पृ धातुदेखि लट्, त, एत्व, श प्रत्यय, 'व्यापृ+अ+ते' रिङ्, इयङ् भयो, 'व्याप्रियते' सिद्ध भयो। यस्तै प्रकारले व्याप्रियेते आदि रूप पनि सिद्ध हुन्छन्।

**व्यापप्रे**- 'व्या+पृ+लिट्', त, एश्, 'व्यापृ+ए', द्वित्वादि 'व्यापपृ+ए' यण् भयो, 'व्यापप्रे' सिद्ध भयो। यस्तै प्रकारले व्यापप्राते व्यापप्रिरे आदि रूप जान्नू।

**लुट्मा** व्यापर्ता आदि। **लृट्मा** "ऋद्धनोःस्ये"ले इट् आगम हुन्छ। व्यापरिष्यते आदि। **लोट्मा** व्या प्रियताम् आदि। **लङ्मा** व्याप्रियत आदि। **विधिलिङ्मा** व्याप्रियेत आदि। **आशीर्लिङ्मा** व्यापृषीष्ट आदि। **लुङ्मा** व्यापृत, व्यापृषाताम् आदि र **लृङ्मा** व्यापरिष्यत आदि रूप हुन्छन्।

**जुषी** धातु प्रेम गर्नु र सेवा गर्नु अर्थमा छ। ईकारको इत्संज्ञा, लोप हुन्छ। (आत्मनेपदी सेट् सकर्मक)

**जुषते**- जुष् लट्, त, एत्व, श, ङित्वाद्, गुणनिषेध भयो, 'जुषते' सिद्ध भयो। यस्तै प्रकारले अरू रूप सिद्ध गर्नू।

**जजुषे**- 'जुष्+ए', द्वित्वादि भयो, 'जुजुषे' सिद्ध भयो। यस्तै प्रकारले जुजुषाते आदि रूप सिद्ध गर्नू।

**लुट्मा** जोषिता आदि। **लृट्मा** जोषिष्यते आदि। **लोट्मा** जुषताम् आदि। **लङ्मा** अजुषत आदि। **विधिलिङ्मा** जुषेत आदि। **आशीर्लिङ्मा** जोषिषीष्ट आदि। **लुङ्मा** अजोषिष्ट आदि। **लृङ्मा** अजोषिष्यत आदि रूप हुन्छन्।

**ओविजी** भयचलनयोः ॥४५॥ प्रायेणायमुत्पूर्वः । उद्विजते ॥

**६६५. विज इट्** १।२।२॥

विजेः पर इडादिप्रत्ययो ङिद्वत् । उद्विजिता ॥

**इति तुदादयः** ॥६॥

---

**ओविजी** धातु डराउनु र चल्नु अर्थमा छ । ओ र ईको इत्संज्ञा, लोप हुन्छ । विज् धातु बाँकी रहन्छ । यो धातु आत्मनेपदी हो । ( सेट्, अकर्मक )

**प्रायेणेति-** प्रायः यो विज् धातु उद् उपसर्ग पूर्वमा भएको प्रयुक्त हुन्छ ।

**उद्विजते-** उद्विज् लट्, त, एत्व, श, गुणनिषेध भयो, 'उद्विजते' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप सिद्ध गर्नू । लिट्मा उद्विविजे आदि रूप हुन्छन् ।

**विज इट् इति-** विज् धातुदेखि पर रहेको इट् आगम आदिमा हुने प्रत्यय ङित् जस्तो होस् ।

**उद्विजिता-** उद् उपसर्गपूर्वक विज् धातुदेखि लुट्, त, डा, तासि प्रत्यय इट् आगम 'उद्+विज्+इतास्+आ' यहाँ "विज इट्"ले इट् आदिमा हुने प्रत्यय 'इतास्' ङित् जस्तो भएपछि, "पुगन्तलघूपधस्य च"ले पाएको गुण "क्ङिति च"ले निषेध भयो, टिलोप भयो, 'उद्विजिता' सिद्ध भयो । यस्तै प्रकारले उद्विजितारौ, उदविजितारः आदि रूप हुन्छन् । यस्तै प्रकारले इट् आदिमा हुने प्रत्यय लृट्मा स्य, आशीर्लिङ्मा सीयुट्, लुङ्मा सिच्, लृङ्मा स्य सबै ङित्वत् हुन्छन् । ङित्वत् भएपछि गुणको निषेध हुन्छ ।

**लृट्मा** उद्विजिष्यते आदि । **लोट्मा** उद्विजताम् आदि । **लङ्मा** उदविजत आदि । **विधिलिङ्मा** उद्विजेत आदि । **आशीर्लिङ्मा** उद्विजिषीष्ट आदि । **लुङ्मा** उदविजिष्ट आदि । **लृङ्मा** उदविजिष्यत आदि रूप हुन्छन् ।

**तुदादि गण समाप्त भयो ।**

---

## अथ रुधादयः

**रुधिर्** आवरणे ॥१॥

**६६६. रुधादिभ्यः श्नम् ३।१।७८॥**

शपोऽपवादः। रुणद्धि। श्नसोरल्लोपः। रुन्धः। रुन्धन्ति। रुणत्सि। रुन्धः। रुन्ध। रुणध्मि। रुन्ध्वः। रुन्धे।

---

**अब रुधादिगण शुरू हुन्छ।**

**रुधिर्** धातु ढाक्नु, रोक्नु अर्थमा छ। यो धातु उभयपदी, अनिट्, सकर्मक हो। "इर इत्संज्ञा वाच्या"ले इर्‌को इत्संज्ञा हुन्छ। यहाँदेखि लिएर उतृदिर् धातु संमका नौ धातु इरित् र उभयपदी छन्।

**रुधादिभ्य इति–** रुधादिगणपठित धातुदेखि श्नम् प्रत्यय होस्, कर्ता अर्थमा विधान गरिएको सार्वधातुकसंज्ञक प्रत्यय पर भएमा। यो श्नम् प्रत्यय शप् प्रत्ययको अपवाद हो।

**रुणद्धि–** रुध् धातुदेखि लट्, तिप् भयो, तिप्‌लाई सार्वधातुकसंज्ञा भएपछि, "कर्तरि शप्"ले शप् प्रत्यय पायो, त्यसलाई बाधेर "रुधादिभ्यः श्नम्"ले श्नम् प्रत्यय भयो, शकारको "लशक्व०"ले मकारको "हलन्त्यम्"ले इत्संज्ञा, लोप भयो, न बाँकी रह्यो, "मिदचोऽन्त्यात्परः"ले यो 'न'मित्‌प्रत्यय हुनाले अन्त्य अच् रुका उकारदेखि पर भयो, 'रुनध्+ति', तिका तकारका स्थानमा "झषस्तथोः"ले धत्व भयो, पूर्वधकारका स्थानमा जश्त्व भएर दकार भयो, रुनद्धि, णत्व भयो, 'रुणद्धि' सिद्ध भयो।

**श्नसोरिति–** "ङित्‌विभक्ति तस् आदि पर भएमा "श्नसोरल्लोपः" लाग्छ।

**रुन्धः–** तस्मा पूर्ववत् श्नम् प्रत्यय भएपछि, 'रुनध्+तस्' यहाँ तस्, ङित् हुनाले "श्नसोरल्लोपः"ले नका अकारको लोप भयो, 'रुन्ध्+तस्', "झषस्तथोः०"ले धत्व भयो, 'रुन्ध्+धस्', "झरो झरि सवर्णे"ले धकारको वैकल्पिक लोप, 'रुन्धस्' भयो, लोप नभएको पक्षमा पूर्वधकारको जश्त्व भएर दकार भयो, 'रुन्द्धस्' दुवै पक्षमा नकारको अनुस्वार परसवर्ण भयो, रुत्व विसर्ग भयो, 'रुन्धः', 'रुन्द्धः' सिद्ध भयो। यी दुवै ठाउँमा "रषाभ्यां नो णः०"ले णत्व पाएकोमा "पूर्वत्रासिद्धम्" लाएर परसवर्ण असिद्ध भएकोले णत्व भएन। अनुस्वार त असिद्ध हुँदैन।

**रुन्धन्ति–** झिमा 'रुनध्+अन्ति', यहाँ "श्नसोरल्लोपः"ले अकारको लोप भयो, अनुस्वार परसवर्ण भयो, 'रुन्धन्ति' सिद्ध भयो।

**रुणत्सि–** सिप्‌मा 'रुनध्+सि', "खरि च"ले धकारको चर्त्व भएर तकार भयो, णत्व भयो, 'रुणत्सि' सिद्ध भयो।

**रुन्धः, रुन्द्धः–** 'रुन्ध्+थस्', यहाँ धत्व, पूर्वधकारको वैकल्पिक लोप, अनुस्वार, परसवर्ण भयो, 'रुन्धः' सिद्ध भयो। धकारको लोप नभएको पक्षमा पूर्ववत् 'रुन्द्धः' सिद्ध भयो। यस्तै प्रकारले सवर्ण लोप हुने स्थलमा दुई दुई रूप को ऊह गर्नू।

**रुणध्मि–** मिप्‌मा 'रुनध्मि' भएपछि णत्व भयो, 'रुणध्मि' सिद्ध भयो। यहाँ झश् पर नहुनाले जश्त्व हुँदैन।

**रुन्ध्व, रुन्ध्मः–** पूर्ववत् परसवर्ण असिद्ध हुनाले णत्व भएन। आत्मनेपदमा त, आताम् आदि सबै विभक्ति ङित् हुनाले "श्नसोरल्लोपः"ले श्नम् प्रत्ययको अकारको लोप हुन्छ।

**रुन्धे–** लट् आत्मनेपद एकवचन तमा 'रुन्ध्+ते', धत्व, 'रुन्ध्+धे', "झरो झरि सवर्णे"ले

रुन्धाते। रुन्धते। रुन्त्से। रुन्धाथे। रुन्ध्वे। रुन्धे। रुन्ध्वहे। रुन्ध्महे। रुरोध, रुरुधे। रोद्धासि, रोद्धासे। रोत्स्यति,रोत्स्यते। रुणद्धु रुन्धात्। रुन्धाम्। रुन्धन्तु। रुन्धि। रुणधानि। रुणधाव। रुणधाम। रुन्धाम्। रुन्धाताम्। रुन्धताम्। रुन्त्स्व। रुणधै। रुणधावहै। रुणधामहै। अरुणत्, अरुणद्।

---

पूर्वधकारको बैकल्पिक लोप भयो, अनुस्वार, परसवर्ण भयो, 'रुन्धे' धकारको लोप नभएको पक्षमा पूर्वधकारको जश्त्व, 'रुन्द्धे' पनि हुन्छ। यस्तै ध्वेमा पनि दुई रूप हुन्छन्।

| | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| रुध् लट् आ.- | प्रथमपुरुष | रुन्धे/रुन्द्धे | रून्धाते | रून्धिरे |
| | मध्यमपुरुष | रुन्त्से | रुन्धाथे | रुन्ध्वे/रुन्द्ध्वे |
| | उत्तमपुरुष | रुन्धे | रुन्ध्वहे | रुन्ध्महे |
| रुध् लिट् पर.- | प्रथमपुरुष | रुरोध | रुरुधतुः | रुरुधुः |
| | मध्यमपुरुष | रुरोधिथ | रुरुधथुः | रुरुध |
| | उत्तमपुरुष | रुरोध | रुरुधिव | रुरुधिम |
| रुध् लिट् आ.- | प्रथमपुरुष | रुरुधे | रुरुधाते | रुरुधिरे |
| | मध्यमपुरुष | रुरुधिषे | रुरुधाथे | रुरुधिध्वे |
| | उत्तमपुरुष | रुरुधे | रुरुधिवहे | रुरुधिमहे |

लिट्मा इट् आगम हुने ठाउँमा क्रादिनियमले नित्य इट् हुन्छ

**लुट्मा** रोद्धासि, रोद्धासे आदि। **लृट्मा** रोत्स्यति, रोत्स्यते आदि रूप हुन्छन्।

**लोट् परस्मैपदमा-** हिका स्थानमा "हुझल्भ्यो हेर्धिः"ले धि हुन्छ। तातङ् पक्षमा तातङ्का आदि तकारका स्थानमा धकार हुन्छ। पूर्वधकारको "झरो झरि०"ले वैकल्पिक लोप हुन्छ। यसैगरी सवर्णको लोप हुने ठाँउमा अन्यत्र पनि दुई रूप हुन्छन्। रुणद्धु/रुन्धात्, रुन्धाम्, रुन्धन्तु। रुन्धि/रुन्धात्, रुन्धम्, रुन्ध। उत्तम पुरुषमा आट् पित् हुनाले श्नसोरल्लोपः" लाग्दैन– रुणधानि, रुणधाव, रुणधाम यी रूप हुन्छन्।

**रुन्धाम्-** आत्मनेपदमा रुध् लोट्, त, एत्व, "सवाभ्यां वामौ"ले आम् 'रुध्+ताम्' श्नम्, अकार लोप, 'रुन्ध्+ताम्' धत्व, सवर्णलोप, अनुस्वार परसवर्ण भयो, 'रुन्धाम्' सिद्ध भयो। यस्तै अरू रूप पनि पूर्ववत् ऊह गर्नू।

| | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| **रुध् लोट् आ.-** | प्रथमपुरुष | रुन्धाम् | रुन्धाताम् | रुन्धताम् |
| | मध्यमपुरुष | रुन्त्स्व | रुन्धाथाम् | रुन्ध्वम् |
| | उत्तमपुरुष | रुणधै | रुणधावहै | रुणधामहै |

आत्मनेपदमा पनि आट् पित् हुनाले श्न प्रत्ययका अकारको लोप भएन। एकवचनमा "एत ऐ"ले ऐत्व भएपछि आटश्चले वृद्धि हुन्छ।

**लङ् परस्मैपदमा–** अरुणत्/द्, अरुन्धाम् अरुन्धन् आदि रूप हुन्छन्। सिप्मा जश्त्व भएर अरुणद् भएपछि "दश्च"ले रुत्व भएको पक्षमा अरुणः, रुत्व नभएको पक्षमा अरुणत्/द् यी रूप हुन्छन्।

मूलमा प्रथमपुरूषका सबै र मध्यमपुरुष एकवचनको रूप दिएको छ। बाँकी रूप-

---

अरुन्धाम्। अरुन्धन्। अरुणः, अरुणत्, अरुणद्। अरुन्ध। अरुन्धाताम्। अरुन्धत। अरुन्धाः। रुन्ध्यात्, रुन्धीत। रुध्यात्, रुत्सीष्ट। अरुधत्, अरौत्सीत्। अरुद्ध। अरुत्साताम्। अरुत्सत। अरोत्स्यत्, अरोत्स्यत ॥ **भिदिर्** विदारणे ॥२॥ **छिदिर्** द्वैधीकरणे ॥३॥ **युजिर्** योगे ॥४॥

---

अरुन्धम्, अरुन्ध। अरुणधम्, अरुन्ध्व, अरुन्ध्म।

रुध् लङ् आ-

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अरुन्ध | अरुन्धाताम् | अरुन्धत |
| मध्यमपुरुष | अरुन्धाः | अरुन्धाथाम् | अरुन्ध्वम् |
| उत्तमपुरुष | अरुन्धि | अरुन्ध्वहि | अरुन्ध्महि |

**विधिलिङ्मा** रुन्ध्यात्, रुन्धीत आदि। **आशीर्लिङ्मा** रुध्यात्, रुत्सीष्ट आदि रूप हुन्छन्। रुत्सीष्ट यहाँ "लिङ्सिचावात्मनेषु"ले लिङ् कित् हुन्छ।

लुङ परस्मैपदमा "इरितो वा"ले वैकल्पिक अङ् भएको पक्षमा अरुधत्, अरुधताम्, अरुधन् आदि रूप हुन्छन्।

अङ् नभएको पक्षमा च्लिका स्थानमा सिच्, इट् आगमको निषेध "वदव्रज०"ले वृद्धि हुन्छ, अरौत्सीत्, अरौत्ताम्, अरौत्सुः आदि रूप हुन्छन्।

**आत्मनेपदमा**– अरुद्ध, अरुत्साताम्, अरुत्सत आदि रूप हुन्छन्। यहाँ पनि "लिङ् सिचावात्मनेपदेषु"ले सिच् कित् भएकोले गुण भएन। **लृङ्मा** अरोत्स्यत्, अरोत्स्यत आदि रूप हुन्छन्।

**भिदिर्** धातु फोर्नु भत्काउनु अर्थमा छ। यो धातु उभयपदी हो। (अनिट्, सकर्मक)

**लट्मा** भिनत्ति, भिन्ते आदि। यहाँ पनि "झरो झरि"ले वैकल्पिक दलोप हुन्छ। **लिट्मा** बिभेद। बिभिदे आदि। **लुट्मा** भेत्तासि, भेत्तासे आदि। **लृट्मा** भेत्स्यति, भेत्स्यते आदि। **लोट्मा** भिनत्तु/भिन्तात्, भिन्धि/भिन्तात् र भिन्ताम् आदि। **लङ्मा** अभिनत्, अभिन्त आदि। **विधिलिङ्मा**। भिन्द्यात्, भिन्दीत आदि। **आशीर्लिङ्मा** भिद्यात्, भित्सीष्ट आदि। **लुङ्मा** अङ् पक्षमा अभिदत्, आदि। सिच् पक्षमा अभैत्सीत्, अभित्त आदि। **लृङ्मा** अभेत्स्यत्, अभेत्स्यत आदि रूप हुन्छन्।

**छिदिर्** धातु काट्नु, दुई टुक्रा गर्नु अर्थमा छ। यो धातु उभयपदी हो। (अनिट्, सकर्मक)

यो धातुका परस्मैपद र आत्मनेपदका रूपहरू प्रत्येक लकारमा क्रमश तल दिइन्छ। **लट्मा**– छिनत्ति, छिन्ते आदि। **लिट्मा** "छे च"ले तुक् हुन्छ चिच्छेद, चिच्छिदे आदि। **लुट्मा** छेत्तासि, छेत्तासे आदि। **लृट्मा** छेत्स्यति, छेत्स्यते आदि। **लोट्मा** छिनत्तु, छिन्तात्। छिन्धि, छिन्तात्। छिन्ताम् आदि। **लङ्मा** तुक्, अच्छिनत्, अच्छिन्त आदि। **विधिलिङ्मा** छिन्द्यात्, छिन्दीत आदि। **आशीर्लिङ्मा** छिद्यात्, छित्सीष्ट आदि। **लुङ्मा** अङ् तुक्, अच्छिदत् आदि। सिच्, अच्छैत्सीत्, अच्छित्त आदि। **लृङ्मा** अच्छेत्स्यत्, अच्छेत्स्यत आदि रूप हुन्छन्।

उपसर्ग योगमा अर्थको भिन्नता -

आच्छिनत्ति (खोस्छ) उच्छिनत्ति (नाश गर्छ)

"आयोधनाग्रसरतां त्वयि वीर याते किं वा रिपूँस्तव गुरुः स्वयमुच्छिनत्ति" (रघुवंशम्)

परिच्छिनत्ति (नाप्छ) अवच्छिनत्ति (नाप्छ)

**युजिर्** धातु जोड्नु अर्थमा छ। इर्को इत्संज्ञा लोप हुन्छ। यो धातु उभयपदी हो। (अनिट्, सकर्मक)

---

**रिचिर्** विरेचने ॥५॥ रिणक्ति, रिङ्क्ते । रिरेच । रेक्ता । रेक्ष्यति । अरिणक् । अरिचत्, अरैक्षीत्, अरिक्त ॥ **विचिर्** पृथग्भावे ॥६॥ विनक्ति, विङ्क्ते ॥ **क्षुदिर्** संपेषणे ॥७॥ क्षुणत्ति,

---

**युज् लट्मा** युनक्ति, युङ्क्ते आदि । **लिट्मा** युयोज, युयुजे आदि । **लुट्मा** योक्तासि, योक्तासे आदि । **लृट्मा** योक्ष्यति, योक्ष्यते आदि । **लोट्मा** युनक्तु, युङ्ग्धि, युङ्क्तात्, युङ्क्ताम् आदि रूप हुन्छन् ।

युज् लङ् परस्मैपदका रूप-

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अयुनक् | अयुङ्क्ताम् | अयुञ्जन् |
| मध्यमपुरुष | अयुनक् | अयुङ्क्तम् | अयुङ्क्त |
| उत्तमपुरुष | अयुनजम् | अयुञ्ज्व | अयुञ्ज्म |

लङ् आत्मनेपदमा अयुङ्क्त, अयुञ्जाताम्, अयुञ्जत आदि रूप हुन्छन् ।

**विधिलिङ्मा** युञ्ज्यात्, युञ्जीत आदि रूप हुन्छन् । "योगी युञ्जीत सततमात्मानं रहसिं स्थितः" (श्रीमद्भगवद्गीता)

**आशीर्लिङ्मा** युज्यात्, युक्षीष्ट आदि । **लुङ्मा अङ्**-अयुजत्, सिच्-अयौक्षीत्, अयुक्त आदि । **लृङ्मा** अयोक्ष्यत्, अयोक्ष्यत आदि रूप हुन्छन् ।

उपसर्ग योगमा अर्थको भिन्नता -

प्रयुङ्क्ते (प्रयोग गर्छ) संयुङ्क्ते (जोड्छ)

"यस्तु प्रयुङ्क्ते कुशलो विशेषे शब्दान् यथावद् व्यवहारकाले" । (पातञ्जल भाष्य)

अनुयुङ्क्ते (प्रश्न गर्छ) वियुङ्क्ते (छुट्याउँछ, छुट्टिन्छ)

नियुङ्क्ते (खटाउँछ) अभियुङ्क्ते (अभियोग लगाउँछ)

उद्युङ्क्ते (उद्योग गर्छ) उपयुङ्क्ते (उपयोग गर्छ)

**रिचिर्** धातु रित्तो बनाउनु अर्थमा छ । यो धातु उभयपदी हो । (अनिट्, सकर्मक )

यस धातुमा पनि झल् पर भएमा र पदान्तमा "चोः कुः" लाग्छ ।

**लट्मा** रिणक्ति, रिङ्क्ते आदि । **लिट्मा** रिरेच, रिरिचे आदि । **लुट्मा** रेक्तासि, रेक्तासे आदि । **लृट्मा** रेक्ष्यति, रेक्ष्यते आदि । **लोट्मा** रिणक्तु, रिङ्क्ताम् आदि । **लङ्मा** अरिणक्, अरिङ्क्त आदि । **विधिलिङ्मा** रिञ्च्यात्, रिञ्चीत आदि । **आशीर्लिङ्मा** रिच्यात्, रिक्षीष्ट आदि । **लुङ्मा** अरिचत्, अरैक्षीत्, अरिक्त आदि । लृङ्मा अरेक्ष्यत्, अरेक्ष्यत आदि रूप हुन्छन् ।

**विचिर्** धातु छुट्याउनु, छुट्टिनु, अर्थमा छ । यो धातु उभयपदी हो । (अनिट्, छुट्टयाउनु अर्थमा सकर्मक र छुट्टिनु अर्थमा अकर्मक ) यसका रूप रिच् धातुका जस्तै हुन्छन् ।

**क्षुदिर्** धातु खुँद्नु राम्रोसँग पिस्नु अर्थमा छ । यो धातु इरित् उभयपदी हो ।(अनिट् सकर्मक)

**क्षुणत्ति**– क्षुद् लट्, तिप्, श्नम्, क्षुनद्ति, णत्व, चर्त्व भयो, 'क्षुणत्ति' सिद्ध भयो ।

क्षुद् लट् परस्मैपद-

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | क्षुणत्ति | क्षुन्त्तः | क्षुन्दन्ति |
| मध्यमपुरुष | क्षुणत्सि | क्षुन्त्थः | क्षुन्त्थ |
| उत्तमपुरुष | क्षुणद्मि | क्षुन्द्वः | क्षुन्द्मः |

क्षुन्ते। क्षोत्ता। अक्षुदत्, अक्षौत्सीत्, अक्षुत्त ॥ **उच्छृदिर्** दीप्तिदेवनयोः ॥८॥ छृणत्ति, छृन्ते। चच्छर्द। सेऽसिचीति वेट्। चच्छृदिषे, चच्छृत्से। छर्दिता। छर्दिष्यति, छर्त्स्यति। अच्छृदत्, अच्छर्दीत्, अच्छर्दिष्ट ॥ **उत्तृदिर्** हिंसानादरयोः ॥९॥ तृणत्ति, तृन्ते ॥ **कृती** वेष्टने ॥१०॥ कृणत्ति। **तृह हिसि** हिंसायाम् ॥११-१२॥

---

| क्षुद् लट् आ.- | प्रथमपुरुष | क्षुन्ते | क्षुन्दाते | क्षुन्दते |
|---|---|---|---|---|
| | मध्यमपुरुष | क्षुन्त्से | क्षुन्दाथे | क्षुन्ध्वे |
| | उत्तमपुरुष | क्षुन्दे | क्षुन्द्वहे | क्षुन्द्महे |

**लिट्मा** चुक्षोद, चुक्षुदे आदि। **लुट्मा** क्षोत्तासि, क्षोत्तासे आदि। **लृट्मा** क्षोत्स्यति, क्षोत्स्यते आदि। **लोट्मा** क्षुणत्तु, क्षुन्धि, क्षुन्ताम् आदि। **लङ्मा** अक्षुणत्/द्, अक्षुणः, अक्षुणत्/द् अक्षुन्त आदि। **विधिलिङ्मा** क्षुण्यात्, क्षुण्वीत् आदि। **आशीर्लिङ्मा** क्षुद्यात्, क्षुत्सीष्ट आदि। **लुङ्मा** अक्षुदत्, अक्षौत्सीत्, अक्षुत्त आदि। **लृङ्मा** अक्षोत्स्यत्, अक्षोत्स्यत आदि रूप हुन्छन्।

**उच्छृदिर्** धातु प्रकाश हुनु र पाशा खेल्नु अर्थमा छ। यो धातु उदित्, इरित् उभयपदी हो। (सेट्, अर्थवशले अकर्मक र सकर्मक दुवै )

**लट्मा** छृणत्ति, छृन्ते आदि। **लिट्मा** तुक्-चच्छर्द, चच्छृदतुः, चच्छृदुः। चच्छर्दिथ आदि। आत्मनेपदमा चच्छृदे आदि। थास् (से)मा "सेऽसिचि कृतच्छृद"ले वैकल्पिक इद् हुन्छ। चच्छृदिषे, चच्छृत्से। **लुट्मा** छर्दितासि, छर्दितासे आदि। **लृट्मा** "सेऽसिचिले" स्यको वैकल्पिक इट्आगम–छर्दिष्यति, छर्त्स्यति। छर्दिष्यते, छर्त्स्यते आदि। **लोटमा** छृणन्तु, छृन्धि। छृन्ताम् आदि। **लङ्मा** अच्छृणत्, अच्छृन्त आदि। **विधिलिङ्मा** छृन्द्यात्, छृन्दीत आदि। **आशीर्लिङ्मा** छृद्यात्, छर्दिषीष्ट आदि। **लुङ्मा** अच्छृदत्, अच्छर्दीत्, अच्छर्दिष्ट आदि। असिचि भनेकोले सिच्को वैकल्पिक इट्आगम हुँदैन। "आर्धधातुकस्येड्वलादेः"ले नै नित्य इट्आगम हुन्छ। **लृङ्मा** अच्छर्दिष्यत्, अच्छर्त्स्यत्, अच्छर्दिष्यत, अच्छर्त्स्यत आदि रूप हुन्छन्।

**उतृदिर्** धातु हिंसा गर्नु र अनादर गर्नु अर्थमा छ। यो धातु उदित्, इरित्, उभयपदी हो। (सेट्, सकर्मक )

**लट्मा** तृणत्ति। आत्मनेपदमा "झरोझरि०"ले दलोप, 'तृन्ते' आदि। **लिट्मा** ततर्द, ततृदे आदि। **लुट्मा** तर्दितासि। तर्दितासे आदि। **लृट्मा** "सेऽसिचि"ले स्यको वैकल्पिक इट् हुन्छ। तर्दिष्यति, तर्त्स्यति, तर्दिष्यते, तर्त्स्यते आदि। **लोट्मा** तृणत्तु, तृन्ताम् आदि। **लङ्मा** अतृणत्, अतृन्त आदि। **विधिलिङ्मा** तृन्द्यात्, तृन्दीत आदि। **आशीर्लिङ्मा** तृद्यात्, तर्दिसीष्ट आदि।

**लुङ्मा** अतृदत्-द्, अतर्दीत्, अतर्दिष्ट आदि। **लृङ्मा** अतर्दिष्यत्, अतर्त्स्यत्, अतर्दिष्यत, अतर्त्स्यत आदि रूप हुन्छन्।

**कृती** धातु काट्नु अर्थमा छ। यो धातु ईदित्, परस्मैपदी हो। (सेट् सकर्मक) **लट्मा** कृणत्ति, कृन्तः, कृन्तन्ति आदि रूप हुन्छन्। यो कृती धातु तान्त हुनाले तृद् धातुमा दकार हुने ठाँउमा तकार हुन्छ। इरित् नहुनाले अङ् हुँदैन। यी बाहेक अरू विषयमा तृद् धातु जस्तै हो। लृट् र लृङ्मा स्य प्रत्ययको "सेऽसिचि०"ले वैकिल्पक इट् आगम पनि हुन्छ।

**तृह्** धातु र **हिसि** धातु हिंसा गर्नु अर्थमा छन्। तृहका अकार र हिसिको अन्तिम इकारको इत्संज्ञा लोप हुन्छ, "इदितो नुम् धातोः"ले नुम् आगम हुन्छ। हिन्स् धातु बन्दछ। (दुवै सेट् सकर्मक ) पहिले क्रम प्राप्त तृह् धातुको रूपसिद्धि गरिन्छ।

---

**६६७. तृणह इम् ७।३।९२॥**

तृहः श्नमि कृते इमागमो हलादौ पिति सार्वधातुके । तृणेढि । तृण्ढः । ततर्ह । तर्हिता । अतृणेट् ॥

**६६८. श्नान्नलोपः ६।४।२३॥**

श्नमः परस्य नस्य लोपः स्यात् । हिनस्ति ।

---

**तृणहेति**– तृह् धातुदेखि श्नम् प्रत्यय गरेपछि इम् आगम होस्, हलादि पित् प्रत्यय पर भएमा ।

**तृणेढि**– तृह् धातुदेखि लट् तिप्, श्नम्, णत्व, 'तृणह्+ति', भएपछि, "तृणह इम्"ले इम् आगम भयो, "मिदचोऽन्त्यात्परः" लगाएर ण देखि पर इ भयो, गुण भयो, 'तृणेह्+ति', यहाँ हकारको "हो ढः"ले ढत्व भयो, 'तृणेढ्+ति', "झषस्तथोः"ले तकारका स्थानमा धकार 'तृणेढ्+धि', ष्टुत्व, तृणेढ्ढि, "ढो ढे लोपः"ले ढकारको लोप भयो, 'तृणेढि' सिद्ध भयो ।

**तृण्ढः**– 'तृणह्+तस्', "श्नसोरल्लोपः"ले अकारको लोप 'तृण्+ह+तस्', ढत्व, धत्व, ष्टुत्व, "तृन्ढ्ढस्", "ढो ढे लोपः"ले ढकारको लोप, णत्व अथवा [९५] "अनुस्वारपरसवर्ण" भयो, 'तृण्ढः' सिद्ध भयो ।

**तृंहन्ति**– 'तृन्ह्+अन्ति', यहाँ नकारको अनुस्वार भयो, 'तृंहन्ति' सिद्ध भयो ।

**तृणेक्षि**– 'तृणेह्+सि', ढत्व, कत्व, षत्व, क्षत्व भयो, 'तृणेक्षि' सिद्ध भयो ।

| **तृह् लट्**– | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | तृणेढि | तृण्ढः | तृंहन्ति |
| | मध्यमपुरुष | तृणेक्षि | तृण्ढः | तृण्ढ |
| | उत्तमपुरुष | तृणेह्मि | तृंह्व | तृंह्मः |

**लिट्मा** ततर्ह आदि । **लुट्मा** तर्हिता आदि । **लृट्मा** तर्हिष्यति आदि । **लोट्मा** तृणेढु/तृण्ढात्, तृण्ढाम्, तृंहन्तु । सिप्मा "हुझल्भ्यो हेर्धिः"ले धि हुन्छ । तृण्ढि, तृण्ढात् । तृण्ढम्, तृण्ढ । उत्तमपुरूषमा आट् पित् भए पनि हलादि नहुनाले इम् भएन, तृणहानि, तृणहाव, तृणहाव यी रूप हुन्छन् ।

**अतृणेट्/ड्**– लङ्मा 'अतृणेह्+ति' यहाँ तिका इकारको लोप, ढत्व, धत्व, ष्टुत्व, ढलोप, 'अतृणेढ्', जश्त्व, चर्त्व भयो, 'अतृणेट्/ड्' सिद्ध भयो ।

| **तृह् लङ्**– | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अतृणेट्/ड् | अतृण्ढाम् | अतृंहन् |
| | मध्यमपुरुष | अतृणेट्/ड् | अतृण्ढम् | अतृण्ढ |
| | उत्तमपुरुष | अतृणहम् | अतृंह्व | अतृंह्म |

**विधिलिङ्मा** तृंह्यात् आदि । **आशीर्लिङ्मा** तृह्यात् आदि । **लुङ्मा** अतार्हीत् आदि । **लृङ्मा** अतर्हिष्यत् आदि रूप हुन्छन् । अब हिंस् धातुका रूपहरू सिद्ध गरिन्छ । हिसि यहाँ इकारको इत्संज्ञा भएकोले "इदितो नुम्धातोः"ले नुम् आगम भएर हिन्स् धातु बन्दछ ।

**श्नान्नेति**– श्नम् प्रत्ययदेखि पर रहेका नकारको लोप होस् ।

**हिनस्ति**– हिन्स् धातुदेखि लट्, लट् लकारका स्थानमा ति, श्नम् प्रत्यय भयो, 'हिनन्स्+ति' भयो, "श्नान्नलोपः"ले श्नको नदेखि पर रहेको हिनन्को नकारको लोप भयो, 'हिनस्ति' सिद्ध भयो ।

---

९५ हुन त यहाँ "ऋवर्णान्नस्य णत्वं वाच्यम्" "रषाभ्यां०"को वार्तिकले णत्व पाउँछ । तर त्यो भन्दा पूर्व "नश्चापदान्तस्य०" छ । दुवै त्रिपादी सूत्र हुन् । अतः त्यसलाई "नश्चापदान्तस्य०"ले बाध्छ । अत एव माधवीयधातुवृत्तिकारले "अपिति अल्लोपेऽनुस्वारपरसवर्णौ" लेख्नु भएको छ ।

जिहिंस । हिंसिता ॥

६६९. **तिप्यनस्तेः ८।२।७३॥**

**पदान्तस्य** सस्य दः स्यात्तिपि न त्वस्तेः । "ससजुषो रुः" इत्यस्यापवादः । अहिनत्, अहिनद् । **अहिंस्ताम्** । अहिंसन् ॥

६७०. **सिपि धातो रुर्वा ८।२।७४॥**

पदान्तस्य धातोः सस्य रुः स्याद्वा, पक्षे दः । अहिनः, अहिनत्, अहिनद् ॥

---

**हिंस्तः**– तस्मा 'हिन्स्+तस्', 'हिनन्+स्+तस्', नलोप, 'हिनस्+तस्' "श्नसोरल्लोपः"ले अकार लोप, 'हिन्स्+तस्', नकारको अनुस्वार रुत्व, विसर्ग भयो, 'हिंस्तः' सिद्ध भयो ।

**हिंसन्ति**–झिमा 'हिनन्+स्+अन्ति', नलोप अकारको लोप, अनुस्वार भयो, 'हिंसन्ति' सिद्ध भयो ।

**हिनस्सि**– सिप्मा 'हिनन्+स्+सि', नलोप भयो, 'हिनस्सि' सिद्ध भयो ।

**हिंस्थः**– थस्मा 'हिनन्स्+थस्' नलोप, अलोप, रुत्व, विसर्ग भयो, 'हिंस्थः' सिद्ध भयो । यस्तै प्रकारले हिंस्थ हुन्छ । तिप्, सिप्, मिप्मा "श्नसोरल्लोपः" लाग्दैन, "श्नान्नलोपः" मात्र लाग्छ । अरू ङित् विभक्तिमा "श्नान्नलोपः" र त्यसपछि "श्नसोरल्लोपः" लाग्छ ।

बाँकी रूप- हिनस्मि हिंस्वः हिंस्मः ।

**लिट्मा** जिहिंस, जिहिंसतुः आदि । **लुट्मा** हिंसिता आदि । **लृट्मा** हिंसिष्यति आदि रूप हुन्छन् ।

**लोट्मा** प्रथमपुरुषमा हिनस्तु, हिंस्तात्, हिंस्ताम्, हिंसन्तु यी रूप हुन्छन् ।

**हिन्धि**– 'हिनन्+स्+सि', 'हिनन्स्+हि', 'हिनन्+स्+धि', नलोप, अपित्वात् अलोप, "धिच" सलोप, अनुस्वार, परसवर्ण भयो, 'हिन्धि' सिद्ध भयो । तातङ् पक्षमा हिन्स्तात् भएपछि अनुस्वार भयो, 'हिंस्तात्' सिद्ध भयो । यस्तै प्रकारले हिंस्तम्, हिंस्त पनि सिद्ध हुन्छन् ।

**हिनसानि**– उत्तमपुरूष मिप्मा 'हिनन्+स्+आनि', "श्नान्नलोपः"ले नकारको लोप, वर्णमेलन भयो, 'हिनसानि' सिद्ध भयो । व, म,मा हिनसाव, हिनसाम यी रूप हुन्छन् ।

**तिपीति**– पदान्त सकारका स्थानमा दकार होस् तिप् पर भएमा अस् धातुका सकारका स्थानमा त नहोस् । यो सूत्र "ससजुषो रुः" को अपवाद हो ।

**अहिनत्/द्**– लङ् प्रथमपुरूष एकवचनमा 'अहिनस्+त्' यहाँ "हल्ङ्याब्भ्यो०"ले तकारको लोप भयो, अहिनस् भयो, सकारका स्थानमा "ससजुषो रुः"ले रु पायो, त्यसलाई बाधेर "तिप्यनस्तेः"ले सकारका स्थानमा दकार भयो, "वाऽवसाने"ले चर्त्व भयो, 'अहिनत्' चर्त्व नभएका पक्षमा 'अहिनद्' यी दुई रूप सिद्ध भए ।

**अहिंस्ताम्**– 'अहिन्स्+तस्' ताम् आदेश 'अहिन्स्+ताम्', श्नम् प्रत्यय 'अहिनन्स्+ताम्', नलोप, अकारको लोप, 'अहिन्स्+ताम्', अनुस्वार भयो, 'अहिंस्ताम्' सिद्ध भयो । बहुवचन झिमा अहिंसन् हुन्छ । प्रक्रिया आफै ऊह गर्नू ।

**सिपीति**– पदान्त धातुका दन्त्य सकारका स्थानमा रु आदेश विकल्पले होस्, सिप् पर भएमा । एकपक्षमा "झलां ज़शोन्ते"ले जश्त्व हुन्छ ।

**अहिनः/अहिनत्/द्**– सिप्मा 'अहिनन्स्+स्', यहाँ "हल्ङ्याब्भ्यो०"ले सकारको लोप भयो, "श्नान्नलोपः"ले नकारलोप भएपछि 'अहिनस्' यहाँ "ससजुषो रुः"लाई बाधेर "प्रत्ययलोपे०" लाएर "सिपि धातो रुर्वा"ले वैकल्पिक रुत्व, विसर्ग भयो, 'अहिनः' सिद्ध भयो । रुत्व नभएको पक्षमा "झलां जशोऽन्ते"ले सकारको जश्त्व भएर दकार भयो, वैकल्पिक चर्त्व भयो, 'अहिनत्' सिद्ध भयो । चर्त्व नभएको पक्षमा 'अहिनद्' सिद्ध भयो । यसरी तीन रूप भए ।

---

**उन्दी** क्लेदने ॥१३॥ उनत्ति । उन्तः । उन्दन्ति । उन्दाञ्चकार । औनत्, औनद् । औन्ताम् । औन्दन् । औनः, औनत्, औनद् । औनदम् ॥

---

बाँकी रूप– अहिंस्तम्, अहिंस्त । अहिनसम्, अहिंस्व, अहिंस्म ।

**हिंस्यात्**– विधिलिङ्मा 'हिन्स्+यास्त्', 'हिनन्+स्+यास्त्', "श्नान्नलोपः", "श्नसोरल्लोपः" 'हिन्स्+यास्त्' संयोगादिलोप, 'हिन्स्+यात्', अनुस्वार भयो, 'हिंस्यात्' सिद्ध भयो ।

**हिंस्याताम्**– 'हिन्स्+यास्', ताम्, 'हिनन्+स्+यास्+ताम्' नलोप, अलोप, 'हिन्स्+यास्+ताम्', सलोप 'हिन्स्+याताम्' अनुस्वार भयो, 'हिंस्याताम्' सिद्ध भयो ।

बाँकी रूप- हिंस्युः । हिंस्याः, हिंस्यातम्, हिंस्यात । हिंस्याम्, हिंस्याव, हिंस्याम ।

**हिंस्यात्**– आशीर्लिङ्मा 'हिन्स्+यास्+त्' यहाँ, संयोगादिलोप, अनुस्वार भयो, 'हिंस्यात् सिद्ध भयो ।

बाँकी रूप– हिंस्यास्ताम्, हिंस्यासुः । हिंस्याः, हिंस्यास्तम्, हिंस्यास्त । हिंस्यासम्, हिंस्यास्व, हिंस्यास्म ।

**लुङ्मा** अहिंसीत् आदि । **लृङ्मा** अहिंसिष्यत् आदि रूप हुन्छन् ।

**उन्दी**धातु भिजाउनु अर्थमा छ । यो धातु ईदित् परस्मैपद हो । (सेट्, सकर्मक )

**लट्मा**– तस्, थस्, थ,मा वैकल्पिक सवर्णलोप हुन्छ र दुई दुई रूप हुन्छन् ।

| **उन्द् लट्**– | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | उनत्ति | उन्तः / उन्त्तः | उन्दन्ति |
| | मध्यमपुरुष | उनत्सि | उन्थः / उन्त्थः | उन्थ / उन्त्थ |
| | उत्तमपुरुक्ष | उनद्मि | उन्द्वः | उन्द्मः |

**लिट्मा** उन्दाञ्चकार । उन्दाम्बभूव । उन्दामास आदि । **लुट्मा** उन्दिता आदि । **लृट्मा** उन्दिष्यति आदि । **लोट्मा** उनत्तु/उन्तात्, उन्धि, उन्तात् आदि रूप हुन्छन् ।

**औनत्/द्**- लङ्मा 'उन्द्+ल्', आट् वृद्धि, तिप्, 'औन्द+ति', श्नम् 'औनन्द्+ति', उत्तर नकारको "श्नान्नलोपः"ले लोप "इतश्च"ले तिका इकारको लोप, 'औनद्+त्', तकारको "हल्ङ्याब्भ्यो०"ले लोप दकारको वैकल्पिक चर्त्व, 'औनत्' सिद्ध भयो । चर्त्व नभएमा 'औनद्' सिद्ध भयो ।

**औन्ताम्**– तस्मा पूर्ववत् 'औनन्द्+ताम्', उत्तर नकारको लोप, नका अकारको लोप, 'औन्द्+ताम्' यहाँ दकारको वैकल्पिक सवर्णलोप, 'औन्ताम्', सिद्ध भयो । सवर्णलोप नभएमा 'औन्त्ताम्' सिद्ध भयो । यसरी यी दुई रूप सिद्ध भए ।

**औनः/औनत्/द्**- सिप्मा पूर्ववत् 'औनद्+स्', सकारको हल्ङ्याब्भ्यो०"ले लोप औनद् यहाँ "दश्च"ले वैकल्पिक रुत्व, विसर्ग, 'औनः' सिद्ध भयो । रुत्व नभएको पक्षमा दकारको वैकल्पिक चर्त्व, 'औनत्/द्' यी दुई रूप सिद्ध भए । यसरी तीन रूप भए ।

**औन्तम्/औन्त्तम्**– तम्मा पनि ताममा जस्तै प्रक्रिया भयो र दुई रूप भए । यस्तै प्रकारले तमा औन्त/औन्त्त दुई रूप हुन्छन् । उत्तमपुरुषमा औनदम्, औन्द्व, औन्द्म यी रूप हुन्छन् ।

**उन्द्यात्**- विधिलिङ्मा तिप्मा 'उनन्द्+यास्ति', तिलोप, सयोगादि सलोप, 'उनन्द्+यात्', उत्तरवर्ती नकारको लोप, अकार लोप भयो, 'उन्द्यात्' सिद्ध भयो ।

**उन्द्याताम्**- तस्मा पूर्ववत् 'उन्द्+यास्ताम्' भएपछि, "लिङः सलोपो"ले सकारको लोप भयो, 'उन्द्याताम्' सिद्ध भयो ।

---

**अञ्जू** व्यक्तिम्रक्षणकान्तिगतिषु ॥१४॥ अनक्ति । अङ्क्तः । अञ्जन्ति । आनञ्ज । आनञ्जिथ, आनङ्क्थ । अञ्जिता, अङ्क्ता । अङ्ग्धि । अनजानि । आनक् ॥

---

बाँकी रूप– उन्द्युः । उन्द्याः । उन्द्यातम् उन्द्यात । उन्द्याम्, उन्द्याव, उन्द्याम ।

**आशीर्लिङ्मा**– "अनिदितां हल०" ले उपधाका नकारको लोप हुन्छ । आर्धधातुक लिङ् हुनाले सलोप हुँदैन । सबै रूप तल दिइन्छ -

| उन्द् आ.लि.- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | उद्यात् | उद्यास्ताम् | उद्यासुः |
| | मध्यमपुरुष | उद्याः | उद्यास्तम् | उद्यास्त |
| | उत्तमपुरुष | उद्यासम् | उद्यास्व | उद्यास्म |

**लुङ्मा** औन्दीत् आदि । **लृङ्मा** औन्दिष्यत् आदि रूप हुन्छन् ।

**अञ्जू** धातु प्रकाश हुनु, माड्नु (तेलघस्नु) इच्छा गर्नु, हिंड्नु अर्थमा छ । ऊकारको इत्संज्ञा लोप हुन्छ । यो धातु परस्मैपदी हो । (सेट्, अर्थवशात् सकर्मक, अकर्मक दुवै)

**अनक्ति**– अञ्ज् लट्, तिप्, 'श्नम्+अनञ्ज्+ति', यहाँ "नकारजावनुस्वारपञ्चमौ" यो नियम अनुसार ञकार नकार नै छ र नकारको "श्नान्नलोपः"ले लोप भयो, 'अनज्+ति', "चोः कुः"ले कुत्व, चर्त्व भयो, 'अनक्ति' सिद्ध भयो ।

**अङ्क्तः**– अञ्ज् लट्, तस्, श्नम् 'अनञ्ज्+तस्' नलोप, अलोप, 'अन्ज्+तस्' कुत्व, चर्त्व, 'अन्+क्तस्' नकारको अनुस्वार, परसवर्ण भयो, कारको रुत्व, विसर्ग भयो । 'अङ्क्तः' सिद्ध भयो ।

**अञ्जन्ति**– झिमा पूर्ववत् 'अन्ज्+अन्ति', अनुस्वार परसवर्ण भयो, 'अञ्जन्ति' सिद्ध भयो ।

बाँकी रूप- अनक्षि, अङ्क्थः, अङ्क्थ । अनज्मि, अञ्ज्वः, अञ्ज्मः ।

**लिट्मा**– अञ्ज्धातु गुरुमान् भए पनि इजादि छैन र आम् हुँदैन ।

**आनञ्ज**– अञ्ज् लिट्, द्वित्वादि, 'अञ्ज्+अञ्ज्+अ', 'अ+अञ्ज्+अ', 'आ+अञ्ज्+अ' नुट्, 'आनञ्ज' सिद्ध भयो । बाँकी रूप- आनञ्जतुः, आनञ्जुः । आनञ्जिथ, आनङ्क्थ । आनञ्जथुः, आनञ्ज । आनञ्ज, आनञ्जिव/आनञ्ज्व । आनञ्जिम/आनञ्ज्म ।

थल्मा र व, ममा "स्वरतिसूति०"ले वैकल्पिक इट् आगम हुने हुनाले दुई दुई रूप हुन्छन् ।

**लुट्मा**– अञ्जिता, अङ्क्ता आदि । **लृट्मा**- अञ्जिष्यति, अङ्क्ष्यति आदि रूप हुन्छन् ।

**लोट्मा**– सिपमा तातङ् नभएको पक्षमा हिका स्थानमा हुझल्भ्यो हेर्धिः"ले धि हुन्छ । तिप्मा तातङ् नभएको पक्षमा र उत्तमपुरुषमा "श्नसोरल्लोपः" लाग्दैन, अन्यत्र लाग्छ ।

| अञ्ज् लोट्- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अनक्तु/अङ्क्तात् | अङ्क्ताम् | अञ्जन्तु |
| | मध्यमपुरुष | अङ्ग्धि/अङ्क्तात् | अङ्क्तम् | अङ्क्त |
| | उत्तमपुरुष | अनजानि | अनजाव | अनजाम |

**लङ्मा** "दश्च", "तिप्यनस्तेः", "सिपिधातोरुर्वा" यी सूत्र कुनै पनि लाग्दैनन् । अरू प्रक्रिया पूर्ववत् स्मरण गर्नू ।

| अञ्ज् लङ्- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | आनक्/ग् | आङ्क्ताम् | आञ्जन् |
| | मध्यमपुरुष | आनक्/ग् | आङ्क्तम् | आङ्क्त |
| | उत्तमपुरुष | आनजम् | आञ्ज्व | आञ्ज्म |

**६७१. अञ्जेः सिचि ७।२।७१॥**

अञ्जेः सिचो नित्यमिट् स्यात् । आञ्जीत् ॥ **तञ्चू** संकोचने ॥१५॥ तनक्ति । तञ्चिता, तङ्क्ता ॥ **ओविजी** भयचलनयोः ॥१६॥

---

**विधिलिङ्मा** अञ्ज्यात् आदि । **आशीर्लिङ्मा** अज्यात् आदि रूप हुन्छन् ।

**अञ्जेरिति**– अञ्जधातुदेखि विधान गरिएका सिच्को नित्य इट्आगम होस् ।

**आञ्जीत्**– 'आञ्ज्+स्+ति', यहाँ "स्वरतिसूति०"ले वैकल्पिक इट्आगम पाएको थियो, त्यसलाई बाधेर "अञ्जेः सिचि"ले नित्य इट्आगम भयो, 'आञ्ज्+इस्+ति', तिका इकारको लोप, ईट्आगम 'आञ्ज्+इस्+ईत्' सकारको लोप, दीर्घ भयो, 'आञ्जीत्' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि हुन्छन् । **लृङ्मा** आञ्जिष्यत्, आङ्क्ष्यत् आदि रूप हुन्छन् ।

| **अञ्ज् लुङ्**- | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | आञ्जीत् | आञ्जिष्टाम् | आञ्जिषुः |
| | मध्यमपुरुष | आञ्जीः | आञ्जिष्टम् | आञ्जिष्ट |
| | उत्तमपुरुष | आञ्जिषम् | आञ्जिष्व | आञ्जिष्म |

उपसर्ग योगमा अर्थको भिन्नता -

अभ्यनक्ति (तेल लगाउँछ) व्यनक्ति (प्रकट गर्छ, व्यङ्ग्य गर्छ, ध्वनित गर्छ ।)

व्यञ्जना, व्यङ्ग्य, आदि साहित्य शास्त्रमा प्रचलित शब्द छन् ।

**तञ्चू** धातु खुंच्याउनु अर्थमा छ । यो धातु ऊदित्, परस्मैपदी हो । (सेट्, सकर्मक )

**तनक्ति**- अनक्तिमा जस्तै प्रक्रिया भएर 'तनक्ति' हुन्छ । त्यस्तै अन्यत्र पनि जान्नू ।

| **तञ्च् लट्**- | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | तनक्ति | तङ्क्तः | तञ्चन्ति |
| | मध्यमपुरुष | तनक्षि | तङ्क्थः | तङ्क्थ |
| | उत्तमपुरुष | तनच्मि | तञ्च्वः | तञ्च्मः |

'सोमेनातनच्मि विष्णो हव्यं रक्ष' । ( शुक्ल यजुर्वेद )

**लिट्मा** ततञ्च, ततञ्चतुः, ततञ्चुः आदि । **लुट्मा** तञ्चिता, तङ्क्ता आदि । **लृट्मा** तञ्चिष्यति । तङ्क्ष्यति आदि रूप हुन्छन् । यहाँ "स्वरति सूति०"ले वैकल्पिक इट् आगम हुन्छ ।

**लोट्मा** तनक्तु/तङ्क्तात् आदि । **लङ्मा** अतनक्, अतङ्क्ताम्, अतञ्चन् आदि । **विधिलिङ्मा** तञ्च्यात् आदि । **आशीर्लिङ्** तच्यात् आदि । **लुङ्मा** इट्आगम भएको पक्षमा "नेटि"ले वृद्धिनिषेध, हुन्छ । अतञ्चीत् आदि रूप हुन्छन् । इट्आगम नभएको पक्षमा अताङ्क्षीत् आदि रूप हुन्छन् । **लृङ्मा** अतञ्चिष्यत् । अतङ्क्ष्यत् आदि रूप हुन्छन् ।

**ओविजी** धातु डराउनु र हडबडाउनु अर्थमा छ । यो धातु ओदित्, ईदित्, परस्मैपदी हो । ओकार र ईकारको इत्संज्ञा लोप भएपछि विज्धातु बाँकी रहन्छ । (सेट्, अकर्मक)

विज् धातुमा अञ्जू धातुमा जस्तै तिप् तस् आदि झलादि विभक्तिमा जकारको कुत्व भएर गकार हुन्छ । ङित् विभक्तिमा "श्नसोरल्लोपः" लाग्छ । धातुमा नकार नहुनाले "श्नान्नलोपः" लाग्दैन ।

---

विनक्ति । विङ्क्तः । विज इडिति ङित्त्वम् । विविजिथ । विजिता । अविनक् । अविजीत् ॥ **शिष्लृ** विशेषणे ॥१७॥ शिनष्टि । शिंष्टः । शिंषन्ति । शिनक्षि । शिशेष । शिशेषिथ । शेष्टा । शेक्ष्यति । हेर्धिः ।

---

ओविजी लट्-

| | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | विनक्ति | विङ्क्तः | विञ्जन्ति |
| | मध्यमपुरुष | विनक्षि | विङ्क्थः | विङ्क्थ |
| | उत्तमपुरुष | विनज्मि | विञ्ज्वः | विञ्ज्मः |

लिट्, थल्मा "विज् इट्"ले इडादिप्रत्यय इथको ङिद्वद्भाव हुन्छ । यस्तै अन्यत्र पनि विज्धातुदेखि पररहेको इट् आगम हुने प्रत्ययको ङिद्वद्भाव हुन्छ ।

ओविजी लिट्-

| | | | | |
|---|---|---|---|---|
| | प्रथमपुरुष | विवेज | विविजतुः | विविजुः |
| | मध्यमपुरुष | विविजिथ | विविजथुः | विविज |
| | उत्तमपुरुष | विवेज | विविजिव | विविजिम |

**लुट्मा** तासि प्रत्यय, **लृट्मा र लृङ्मा** स्य प्रत्यय, **लुङ्मा** सिच् प्रत्ययको इट् आगम भएकोले उक्त सूत्रले ङिद्वद्भाव हुन्छ र ङित्वात् गुणनिषेध हुन्छ । यस्तै अन्यत्र पनि विचार गर्नू ।

**लुट्मा** विजिता आदि **लृट्मा** विजिष्यति आदि । **लोट्मा** विनक्तु/विङ्क्तात्, विङ्ग्धि/विङ्क्तात् आदि रूप हुन्छन् ।

**लङ्मा** अविनक्, अविङ्क्ताम्, अविञ्जन् । अविनक्, अविङ्क्तम् आदि । **विधिलिङमा** विञ्ज्यात् आदि । **आशीर्लिङमा** विज्यात् आदि । **लुङ्मा** अविजीत् आदि । **लृङ्मा** अविजिष्यत् आदि रूप हुन्छन् ।

**शिष्लृ** धातु छुटयाउनु अर्थमा छ, लृदित् हुनाले अङ् हुन्छ । यो धातु परस्मैपदी हो ।(अनिट्, अर्थ विशेषले सकर्मक अकर्मक दुवै )

**शिनष्टि**, शिष् लट्, 'शिष्+ति' श्नम् 'शिनष्+ति', ष्टुत्व भयो, 'शिनष्टि' सिद्ध भयो ।

**शिंष्टः**– 'शिष्+तस्', श्नम्, 'शिनष्+तस्', "श्नसोरल्लोपः"ले अकारको लोप 'शिन्ष्+तस्' ष्टुत्व, अनुस्वार, रुत्व, विसर्ग भयो, 'शिंष्टः' सिद्ध भयो ।

**शिंषन्ति**– 'शिनष्+अन्ति', 'शिन्ष्+अन्ति' अनुस्वार, 'शिंषन्ति' सिद्ध भयो ।

**शिनक्षि**– 'शिनष्+सि', "षढोः कः सि" कत्व, षत्व, क्षत्व भयो, 'शिनक्षि' सिद्ध भयो ।

**अरू रूप**– शिंष्ठः, शिंष्ठ । शिनष्मि, शिंष्व, शिंष्मः ।

शिष् लिट्-

| | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | शिशेष | शिशिषतु | शिशिषुः |
| | मध्यमपुरुष | शिशेषिथ | शिशिषथुः | शिशिष |
| | उत्तमपुरुष | शिशेष | शिशिषिव | शिशिषिम |

**लुट्मा** शेष्टा आदि। **लृट्मा** शेक्ष्यति आदि रूप हुन्छन्।

**शिनष्टु/शिंष्टात्**- विध्यादि लोटमा र आशीर्वाद अर्थको लोटमा पनि तातङ् नभएको पक्षमा 'शिनष्टु' सिद्ध भयो । तातङ् भएको पक्षमा तातङ्मा ङित्व हुनाले "श्नसोरल्लोपः"ले अकार लोप भयो, 'शिंष्टात्' सिद्ध भयो, यस्तै प्रकारले शिंष्टाम्, शिंषन्तु यी रूप पनि हुन्छन् ।

---

शिण्ड्ढि । शिनषाणि । अशिनट् । शिंष्यात् । शिष्यात् । अशिषत् ॥ एवं **पिष्लृ** संचूर्णने ॥१८॥ **भञ्जो** आमर्दने ॥१९। श्नान्नलोपः । भनक्ति । बभञ्जिथ, बभङ्क्थ ।

---

**शिण्ढि/शिण्ड्ढि**– 'शिनष्+सि', सिका स्थानमा हि, 'शिनष्+हि', हि, अपित् हुनाले अकारलोप 'शिन्+ष्+हि' धिआदेश, 'शिन्ष्+धि' जश्त्व, 'शिन्ड्+धि' उभयत्र ष्टुत्व, 'शिण्ड्ढि' वैकल्पिक सवर्णलोप भयो, 'शिण्ढि' सिद्ध भयो । सवर्णलोप नभएको पक्षमा 'शिण्ड्ढि' सिद्ध भयो । तातङ् पक्षमा शिंष्टात् हुन्छ । बाँकी रूप- शिंष्टम्, शिंष्ट । शिनषाणि, शिनषाव, शिनषाम ।

**अशिनट्/ड्**– लङ्मा पूर्ववत् सबै प्रक्रिया भएपछि तिप् र सिप्का अपृक्त सकारको "हल्ङ्याब्भ्यो०"ले लोप भएर 'अशिनष्' भएपछि, जश्त्व, चर्त्व भएर 'अशिनट्/ड्' यी दुई रूप सिद्ध हुन्छन् । अरू विभक्तिमा विशेष प्रक्रिया छैन ।

| **शिष् लङ्-** | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अशिनट्/ड् | अशिंष्टाम् | अशिंषन् |
| | मध्यमपुरुष | अशिनट्/ड् | अशिंष्टम् | अशिंष्ट |
| | उत्तमपुरुष | अशिनषम् | अशिंष्व | अशिंष्म |

**शिंष्यात्**– विधिलिङ्मा 'शिनष्+यात्', "श्नसोरल्लोपः"ले अकार लोप, 'शिन्ष्+यात्', अनुस्वार, 'शिंष्यात्' सिद्ध भयो । यस्तै प्रकारले शिंष्याताम्, शिंष्युः आदि रूप जान्नू ।

**शिष्यात्**– आशीर्लिङ्मा पूर्ववत् 'शिष्+यास्+त्' भएपछि, संयोगादिलोप भयो, 'शिष्यात्' सिद्ध भयो ।

**शिष्यास्ताम्**– 'शिष्+यास्+ताम्' यहाँ "लिङः सलोपो" लाग्दैन, 'शिष्यास्ताम्' सिद्ध हुन्छ । यस्तै प्रकारले शिष्यासुः आदि रूप पनि ऊह गर्नू ।

**अशिषत्**– लुङ्मा "पुषादिद्युताद्य०"ले अङ् ङित्वाद्, गुणनिषेध भयो, 'अशिषत्' सिद्ध भयो । यस्तै प्रकारले अशिषताम् आदि रूप हुन्छन् ।

**अशेक्ष्यत्**– लृङ्मा "एकाच उपदेशे०"ले इट् निषेध, कत्व, षत्व र क्षत्व भयो, 'अशेक्ष्यत्' सिद्ध भयो । यस्तै अरू रूप पनि सिद्ध गर्नू ।

**पिष्लृ** धातु पिस्नु अर्थमा छ । यो धातु परस्मैपदी हो । (अनिट्, सकर्मक )

"पिनष्टीव तरङ्गाग्रैः समुद्रः फेनचन्दनम्" । ( काव्यादर्श ।)

**भञ्जो** धातु भाच्नु अर्थमा छ । ओकारको इत्संज्ञा लोप हुन्छ, यो धातु परस्मैपदी हो । (अनिट्, सकर्मक )

| **भञ्ज् लट्-** | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | भनक्ति | भङ्क्तः | भञ्जन्ति |
| | मध्यमपुरुष | भनक्षि | भङ्क्थः | भङ्क्थः |
| | उत्तमपुरुष | भनज्मि | भञ्ज्वः | भञ्ज्मः |

तासि प्रत्ययमा नित्यानिट् अकारवान्धातु हुनाले **लिट्** लकारको थलमा वैकल्पिक इट् हुन्छ । व, म,मा "कृसृभृवृ०"ले नित्य इट् हुन्छ ।

| **भञ्ज् लिट्-** | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | बभञ्ज | बभञ्जतुः | बभञ्जुः |
| | मध्यमपुरुष | बभञ्जिथ/बभङ्क्थ | बभञ्जथुः | बभञ्ज |
| | उत्तमपुरुष | बभञ्ज | बभञ्जिव | बभञ्जिम |

लुट्मा "एकाच"ले इट् आगम निषेध हुन्छ । यस्तै र लृट्मा र लृङ्मा स्य प्रत्ययको इट्

भङ्क्ता । भङ्ग्धि । अभाङ्क्षीत् ॥ **भुज** पालनाभ्यवहारयोः ॥२०॥ भुनक्ति । भोक्ता । भोक्ष्यति । अभुनक् ॥

**६७२. भुजोऽनवने १।३।६६॥**

तङानौ स्तः । ओदनं भुङ्क्ते ।

---

आगम निषेध हुन्छ । लुङ्मा पनि सिच्को इट् आगम निषेध हुन्छ ।

**लुट्मा** भङ्क्ता, भङ्क्तारौ, भङ्क्तारः आदि रूप हुन्छन् । **लृट्मा** भङ्क्ष्यति आदि । **लोट्मा** भनक्तु, भङ्क्तात् आदि । **लङ्मा-** अभनक्-ग् अभङ्क्ताम्, अभञ्जन् आदि । **विधिलिङ्मा** पूर्ववत् भञ्ज्यात्, भञ्ज्याताम् आदि । **आशीर्लिङ्मा** पूर्ववत् "अनिदितां०"ले नकारको लोप हुन्छ । भज्यात्, भज्यास्ताम्, भज्यासुः आदि रूप हुन्छन् ।

**अभाङ्क्षीत्-** लुङ्मा 'अभञ्ज्+स्+ईत्', "वदव्रज०"ले वृद्धि, 'अभाञ्ज्+स्+ईत्', कुत्व, चर्त्व, षत्व, क्षत्व भयो, 'अभाङ्क्षीत्' सिद्ध भयो । ताम्मा सिच् लुक् अभाङ्क्ताम् ।

बाँकी रूप- अभाङ्क्षुः । अभाङ्क्षीः, अभाङ्क्तम्, अभाङ्क्त । अभाङ्क्षम्, अभाङ्क्ष्व अभाङ्क्ष्म ।

**लृङ्मा** अभङ्क्ष्यत् आदि रूप हुन्छन् ।

**भुज**धातु पालन गर्नु र खानु अर्थमा छ । धातुका अनेक अर्थ हुन्छन् । उक्त दुई अर्थ उपलक्षण मात्र हुन् । यो धातु खानुबाहेक अरू अर्थमा परस्मैपदी, खानु अर्थमा आत्मनेपदी हो । (अनिट्, सकर्मक )

**भुनक्ति**– लट् पालन अर्थमा भुज् लट्, तिप्, श्नम् 'भुनज्+ति' चर्त्व, कुत्व भयो, 'भुनक्ति' सिद्ध भयो ।

**भुङ्क्तः**– 'भुनज्+तस्', "श्नसोरल्लोपः" 'भुन्ज्+तस्', कुत्व, चर्त्व, अनुस्वार, परसवर्ण भयो, 'भुङ्क्तः' सिद्ध भयो ।

बाँकी रूप- भुञ्जन्ति । भुनक्षि, भुङ्क्थः, भुङ्थ । भुनज्मि, भुञ्ज्वः, भुञ्ज्मः ।

**लिट्मा** बुभोज, बुभुजतुः, बुभुजुः । थल्मा र व, म,मा क्रादिनियमले नित्य इट् हुन्छ । बाँकी रूप बुभोजिथ, बुभुजथुः, बुभुज । बुभोज बुभुजिव बुभुजिम ।

**लुट्मा** भोक्ता आदि । **लृट्मा** भोक्ष्यति आदि । **लोट्मा** भुनक्तु/भुङ्क्तात् आदि । **लङ्मा** अभुनक्/ग् **विधिलिङ्मा** भुज्यात्, भुज्याताम् आदि । **आशीर्लिङ्मा** भुज्यात्, भुज्यास्ताम् आदि । **लुङ्मा** अभौक्षीत्, अभौक्ताम् आदि । **लृङ्मा** अभोक्ष्यत् आदि रूप हुन्छन् ।

**भुज इति**– पालना गर्नु बाहेक अन्य अर्थमा भुज्धातुदेखि विधान गरिएका लकारका स्थानमा तङ् र शानच् कानच् होऊन् ।

**भुङ्क्ते**– पालन बाहेक अरू अर्थमा भुज् धातुदेखि लट् भयो, 'भुज्+ल्' भयो, "शेषात्कर्तरि०"ले परस्मैपद पायो, त्यसलाई बाधेर "भुजोऽनवने"ले आत्मनेपद प्रथमपुरुष एकवचन त भयो, 'भुञ्ज्+ते' कुत्व, चर्त्व, अनुस्वार, परसवर्ण, 'भुङ्क्ते' सिद्ध भयो ।

बाँकी रूप- भुञ्जाते, भुञ्जते । भुङ्क्षे, भुञ्जाथे, भुङ्ग्ध्वे । भुञ्जे भुञ्ज्वहे भुञ्ज्महे ।

**लिट्मा**– से, ध्वे, वहे, महेमा क्रादिनियमले नित्य इट् हुन्छ ।

| **भुज् लिट् आ.-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | बुभुजे | बुभुजाते | बुभुजिरे |
| | मध्यमपुरुष | बुभुजिषे | बुभजाथे | बुभुजिध्वे |
| | उत्तमपुरुष | बुभुजे | बुभुजिवहे | बुभुजिमहे |

**लुट्मा** भोक्ता, भोक्तारौ, भोक्तारः, भोक्तासे आदि । **लृट्मा** भोक्ष्यते, इत्यादि । **लोट्मा** भुङ्क्ताम्, भुञ्जाताम्, भुञ्जताम् आदि रूप हुन्छन् ।

---

अनवने किम् ? महीं भुनक्ति ॥ **ञिइन्धी** दीप्तौ ॥२१॥ इन्द्धे । इन्धाते । इन्धते । इन्त्से । इन्ध्वे । इन्धाञ्चक्रे । इन्धिता । इन्धाम् । इन्धाताम् । इनधै ऐन्ध । ऐन्धाताम् । ऐन्धाः ॥ **विद** विचारणे ॥ २२॥ विन्ते । वेत्ता ॥

**इति रुधादयः ॥७॥**

---

**लङ्मा** अभुङ्क्त, अभुञ्जाताम्, अभुञ्जत आदि । **विधिलिङ्मा** भुञ्जीत आदि । **आशीर्लिङ्मा** भुक्षीष्ट आदि । **लुङ्मा** अभुक्त, अभुक्षाताम् आदि । **लृङ्मा** अभोक्ष्यत आदि रूप हुन्छन् ।

**ओदनं भुङ्क्ते-** (भात खान्छ), यो पालन अर्थदेखि भिन्न अर्थमा हुनाले भुज्धातुदेखि आत्मनेपद भएको उदाहरण हो ।

**अनवने किम् इति-** अनवने किम् पालन गर्नु अर्थदेखि भिन्न अर्थमा आत्मनेपद होस् । किन भन्नु ? नभन्ने हो भने 'महीं भुनक्ति' (पृथ्वी पालन गर्छ) भन्दा यहाँ पालना अर्थमा पनि आत्मनेपद होला । सो नहोस् भनेर हामीले अनवने भन्यौं, अनवने भनेपछि, पालन गर्नु अर्थदेखि भिन्नअर्थमा आत्मनेपद होस् भन्ने अर्थ भयो । यहाँ पालन गर्नु अर्थदेखि भिन्न अर्थ बुझिदैन । पालन अर्थ नै बुझिन्छ र आत्मने पद भएन परस्मैपद भयो, 'महीं भुनक्ति' सिद्ध भयो ।

**ञिइन्धी** धातु प्रकाश हुनु अर्थमा छ । ञिको र अन्तिम ईको इत्संज्ञा लोप हुन्छ, इन्ध्धातु बाँकी रहन्छ । यो धातु अनुदात्तेत् आत्मनेपदी हो, अनुदात्त होइन । (सेट् अकर्मक )

**इन्धे/इन्द्धे-** लट्मा 'इनन्ध्+ते' यहाँ "श्नान्नलोपः"ले नकारको लोप भयो, "श्नसोरल्लोपः"ले अकारको लोप भयो, 'इन्ध्+ते' भयो, सवर्णलोप, अनुस्वार, परसवर्ण भयो, 'इन्धे' सिद्ध भयो । सवर्ण लोप नभएमा पूर्वधकारको जश्त्व, अनुस्वार, परसवर्ण भयो, 'इन्द्धे' सिद्ध भयो ।

बाँकी रूप- इन्धाते, इन्धते । इन्त्से, इन्धाथे, इन्ध्वे/इन्द्ध्वे, इन्धे, इन्ध्वहे, इन्ध्महे ।

**लिट्मा-** "इजादेश्च०"ले आम् र कृ, भू अस्को अनुप्रयोग हुन्छ । इन्धाञ्चक्रे । इन्धाम्बभूव । इन्धामास । आदि रूप हुन्छन् । **लुट्मा** इन्धिता, इन्धितारौ, इन्धितारः । इन्धितासे आदि । **लृट्मा** इन्धिष्यते, इन्धिष्येते, आदि । **लोट्मा** इन्धताम्, इन्धेताम्, इन्धन्ताम् आदि रूप हुन्छन् ।

**ऐन्ध/ऐन्द्ध-** इन्ध् धातुदेखि लङ् लकार प्रथमपुरुष एकवचन त, आट्, वृद्धि, श्नम्प्रत्यय धातुको नकारको लोप, श्नम् प्रत्ययको अकारको लोप, थकारको धकार पूर्वधकारको "झरो झरि०"ले लोप भयो, 'ऐन्ध' सिद्ध भयो । धकारको लोप नभएका पक्षमा पूर्वधकारको जश्त्व, भयो, 'ऐन्द्ध' सिद्ध भयो । थास्मा र ध्वम्मा पनि यहीं प्रक्रिया हुन्छ । अरू रूप आफै ऊह गर्नू ।

| इन्ध् लङ् - | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | ऐन्ध/ऐन्द्ध | ऐन्धाताम् | ऐन्धत |
| | मध्यमपुरुष | ऐन्धाः/ऐन्द्धाः | ऐन्धाथाम् | ऐन्ध्वम्/एन्द्ध्वम् |
| | उत्तमपुरुष | एन्धि | ऐन्ध्वहि | ऐन्ध्महि |

**विधिलिङ्मा**इन्धीत, इन्धीयाताम्, इन्धीरन् । इन्धीथाः आदि । **आशीर्लिङ्मा** इन्धिषीष्ट, इन्धिषीयास्ताम्, इन्धिषीरन् आदि । **लुङ्मा** ऐन्धिष्ट, ऐन्धिढ्वम् आदि । **लृङ्मा** ऐन्धिष्यत आदि रूप हुन्छन् ।

**विद** धातु विचार गर्नु अर्थमा छ । यो धातु आत्मनेपदी, अनिट्, सकर्मक हो । दिग्दर्शनका निमित्त लट् आदि लकारका एक एक रूप क्रमशः तल दिइन्छ ।

विन्ते । विविदे । वेत्ता । वेत्स्यते । विन्ताम् । अविन्त । विन्दीत । वित्सीष्ट । अवित्त । अवेत्स्यत ।

**रुधादिगण सकियो ।**

------------

## अथ तनादयः

**तनु विस्तारे ॥१॥**

**(सू. नं. ५७१. तनादिकृञ्भ्य उः ३।१।७९।।)**

शपोऽपवादः । तनोति, तनुते । ततान,

---

**अब तनादिगण शुरू हुन्छ ।**

**तनु** धातु फैलाउनु अर्थमा छ । उकारको इत्संज्ञा लोप हुन्छ । उभयपदी सेट् सकर्मक धातु हो ।

**तनादीति**– तनादि धातु र कृञ् धातुदेखि उप्रत्यय होस्, कर्ता अर्थमा विधान गरिएको सार्वधातुक प्रत्यय पर भएमा । यो शप्को अपवाद हो ।

**तनोति**– तन् लट्, परस्मैपद तिप्, शप्लाई बाधेर "तनादिकृञ्भ्य०"ले उप्रत्यय 'तन्+उ+ति', तिलाई पर राखेर तनुलाई अङ्ग संज्ञा "सार्वधातुकार्धधातुकयोः"ले तनुका उकारका स्थानमा गुण भयो, 'तनोति' सिद्ध भयो ।

**तनुतः**– 'तनु+तस्' यहाँ उकारको गुण निषेध भयो, 'तनुतः' सिद्ध भयो ।

**तन्वन्ति**– 'तनु+अन्ति' यहाँ गुणनिषेध भएपछि "बाधकाभावे०" लगाएर "इको यणचि"ले यण् भयो, 'तन्वन्ति' सिद्ध भयो ।

**तन्वः/तनुवः, तन्मः/तनुमः**– वस् मस्मा 'तनु+वस्', 'तनु+मस्' यहाँ "लोपश्चास्यान्यतस्यां म्वोः०"ले उकारको वैकल्पिक लोप भयो, 'तन्+वस्', 'तन्+मस्' रुत्व, विसर्ग भयो, 'तन्वः', 'तन्मः' यी दुई रूप सिद्ध भए । लोप नभएको पक्षमा रुत्व, विसर्ग भयो, 'तनुवः', 'तनुमः' यी दुई रूप सिद्ध भए । सबै रूप तल दिइन्छ ।

| तन् लट् प.- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | तनोति | तनुतः | तन्वन्ति |
| | मध्यमपुरुष | तनोषि | तनुथः | तनुथ |
| | उत्तमपुरुष | तनोमि | तन्वः/तनुवः | तन्मः/तनुमः |

**तनुते**– आत्मनेपदमा 'तनु+ते', यहाँ तेलाई पर राखेर तनुको अङ्गसंज्ञा भएपछि "सार्वधातुकार्धधातुकयोः"ले गुण पाएकोमा 'ते' यो ङित् हुनाले गुणनिषेध भयो, 'तनुते' सिद्ध भयो । अजादि विभक्ति आताम् आदिमा यण् र वहे महेमा वैकल्पिक उकार लोप हुन्छ । से, ध्वेमा यथावत् उ रहन्छ । सबै रूप तल दिइन्छ ।

| तन् लट् आ.- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | तनुते | तन्वाते | तन्वते |
| | मध्यमपुरुष | तनुषे | तन्वाथे | तनुध्वे |
| | उत्तमपुरुष | तन्वे | तन्वहे/तनुवहे | तन्महे/तनुमहे |

**ततान**– लिट् परस्मैपद एकवचन तिप्, णल्, 'तन्+अ', द्वित्वादि भयो, 'ततान' सिद्ध भयो । परस्मैपदमा कित् लिट्मा र थल्मा सेट् हुनाले एत्व र अभ्यासलोप हुन्छ । आत्मनेपदमा कित्

तेने । तनितासि, तनितासे । तनिष्यति, तनिष्यते । तनोतु, तनुताम् । अतनोत्, अतनुत । तनुयात्, तन्वीत । तन्यात्, तनिषीष्ट । अतानीत्, अतनीत् ॥

**६७३. तनादिभ्यस्तथासोः २।४।७९॥**

तनादेः सिचो वा लुक् स्यात्तथासोः । अतत, अतनिष्ट ।

---

लिट् हुनाले सर्वत्र एत्व र अभ्यासको लोप हुन्छ । परस्मैपदमा थल्मा र व, म,मा आत्मनेपदमा से, ध्वे, वहे, महेमा नित्य इट् हुन्छ ।

**तन् लिट् प.-**

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | ततान | तेनतुः | तेनुः |
| मध्यमपुरुष | तेनिथ | तेनथुः | तेन |
| उत्तमपुरुष | ततान/ततन | तेनिव | तेनिम |

**तन् लिट् आ.-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | तेने | तेनाते | तेनिरे |
| मध्यमपुरुष | तेनिषे | तेनाथे | तेनिध्वे |
| उत्तमपुरुष | तेने | तेनिवहे | तेनिमहे |

**लुट्मा** तनितासि, तनितासे आदि । **लृट्मा** तनिष्यति । तनिष्यते आदि । **लोट्मा** तनोतु/तनुतात्, तनुताम् आदि ।

तन् विधिलिङ् परस्मैपद-

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | तनुयात् | तनुयाताम् | तनुयुः |
| मध्यमपुरुष | तनुयाः | तनुयातम् | तनुयात |
| उत्तमपुरुष | तनुयाम् | तनुयाव | तनुयाम |

तन् विधिलिङ् आत्मनेपद-

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | तन्वीत | तन्वीयाताम् | तन्वीरन् |
| मध्यमपुरुष | तन्वीथाः | तन्वीयाथाम् | तन्वीध्वम् |
| उत्तमपुरुष | तन्वीय | तन्वीवहि | तन्वीमहि |

आशीर्लिङ् आर्धधातुक हुनाले उप्रत्यय हुँदैन । यासुट्का सकारको लोप पनि हुँदैन । परस्मैपदमा तन्यात् तन्यास्ताम् तन्यासुः आदि रूप र आत्मनेपदमा पनि सीयुट् र सुट्का सकारको लोप हुँदैन सीयुट् वलादि हुनाले "आर्धधातुकस्येड्०"ले इट् आगम हुन्छ । तनिषीष्ट, तनिषीयास्ताम्, तनिषीरन् आदि रूप हुन्छन् ।

**लुङ् परस्मैपदमा**- "अतो हलादेर्लघोः"ले वैकल्पिक वृद्धि हुन्छ । अतानीत्, अतनीत् आदि रूप हुन्छन् । आत्मनेपदमा विशेष सूत्र छ-

**तनादिभ्य इति**- तनादिगण पठित धातुदेखि पर रहेका सिच्को वैकल्पिक लुक् होस् त र थास् पर भएमा ।

**अतत/अतनिष्ट**- तन् धातुदेखि लुङ्, अट्, त, च्लि, सिच्, 'अतन्+स्+त' यहाँ "तनदिभ्यस्तथासोः"ले सिच्को वैकल्पिक लुक् भयो, 'अतन्+त' भयो, "अनुदात्तोपदेशवनति०"

---

अतथाः, अतनिष्ठाः । अतनिष्यत्, अतनिष्यत ॥ **षणु** दाने ॥२॥ सनोति, सनुते ॥

**६७४. ये विभाषा ६।४।४३॥**

जनसनखनामात्वं वा यादौ क्ङिति । सायात्, सन्यात् ॥

---

यो सूत्रले नकारको लोप भयो, 'अतत' सिद्ध भयो । लुक् नभएको पक्षमा इट्‌आगम भयो, 'अतन्+इस्+त', षत्व, ष्टुत्व भयो, 'अतनिष्ट' सिद्ध भयो ।

**अतथाः/अतनिष्ठाः**– पूर्ववत् 'अतन्+स्+थास्' यहाँ सिच्‌को विकल्पले लुक् भयो, अनुनासिक लोप भयो, 'अतथाः' सिद्ध भयो । लुक् नभएको पक्षमा इट्, षत्व, ष्टुत्व भयो, 'अतनिष्ठाः' सिद्ध भयो ।

| **तन् लङ् आ.-** | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अतत/अतनिष्ट | अतनिषाताम् | अतनिषत |
| | मध्यमपुरुष | अतथाः/अतनिष्ठाः | अतनिषाथाम् | अतनिढ्वम् |
| | उत्तमपुरुष | अतनिषि | अतनिष्वहि | अतनिष्महि |

**लृङ्‌मा** अतनिष्यत् । अतनिष्यत आदि रूप हुन्छन् ।

**षणु**– धातु दान गर्नु अर्थमा छ । उकारको इत्संज्ञा, लोप हुन्छ । षकारको "धात्वादेः ष सः"ले सत्व हुन्छ, "निमित्तापाये०" लगाएर णकारको नकार हुन्छ । सन् धातु बन्दछ । यो धातु स्वरितेत्, उभयपदी हो । (सेट्, सकर्मक )

**लट् परस्मैपदमा** सनोति, सनुतः, सन्वन्ति आदि र **आत्मनेपदमा** सनुते, सन्वाते, सन्वते आदि रूप हुन्छन् ।

**लिट् परस्मैपदमा** ससान, सेनतुः, सेनुः आदि र **आत्मनेपदमा** सेने, सेनाते, सेनिरे आदि ।

**लुट् परस्मैपदमा** सनिता, सनितारौ, सनितारः । सनितासि आदि र **आत्मनेपदमा** सनिता, सनितारौ, सनितारः । सनितासे आदि रूप हुन्छन् ।

**लोट् परस्मैपदमा** सनोतु/सनुतात् आदि । **आत्मनेपदमा** सनुताम्, सन्वाताम् आदि । **लङ् परस्मैपदमा** असनोत् आदि । **आत्मनेपदमा** असनुत आदि । **विधिलिङ् परस्मैपदमा** सनुयात् आदि । आत्मनेपदमा सन्वीत आदि रूप हुन्छन् । आशीर्लिङ्‌मा विशेष कार्य छ ।

**ये विभाषेति**– जन् धातु, सन् धातु, खन् धातुका अन्त्य अल्‌का स्थानमा आत्व होस्, यकार आदिमा हुने कित् ङित् प्रत्यय पर भएमा ।

**सायात्/सन्यात्**– सन् धातुदेखि आशीर्वाद अर्थमा लिङ् परस्मैपद तिप्, यासुट् आगम, तिका इकारको लोप, संयोगादि लोप भएर 'सन्+यात्' भएपछि नकारका स्थानमा ये "विभाषा"ले वैकल्पिक आत्व भयो, दीर्घ भयो । 'सायात्' सिद्ध भयो । आत्व नभएका पक्षमा 'सन्यात्' सिद्ध भयो । यस्तै प्रकारले सबै पुरुष र वचनमा दुई दुई रूप हुन्छन् ।

सन् आशीर्लिङ् परस्मैपद (आत्व भएको पक्षमा)-

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | सायात् | सायास्ताम् | सायासुः |
| मध्यमपुरुष | सायाः | सायास्तम् | सायास्त |
| उत्तमपुरुष | सायासम् | सायास्व | सायास्म |

आत्वाभाव पक्षमा- सन्यात्, सन्यास्ताम्, सन्यासुः आदि रूप ऊह गर्नू ।

आत्मनेपदमा सनिषीष्ट आदि एकथरी मात्र रूप हुन्छन् ।

**६७५. जनसनखनां सञ्झलोः ६।३।४२॥**

एषामाकारोऽन्तादेशः स्यात् सनि झलादौ क्ङिति च । असात, असनिष्ट । असाथाः, असनिष्ठाः ॥ **क्षणु** हिंसायाम् ॥३॥ क्षणोति, क्षणुते ॥ ह्म्यन्तेति न वृद्धिः । अक्षणीत्,

---

**लुङ् परस्मैपदमा**– असानीत्, असनीत् आदि रूप हुन्छन् । यहाँ "अतो हलादेः०"ले वैकल्पिक वृद्धि हुन्छ । आत्मनेपदमा विशेष प्रक्रिया छ–

**जनसनेति**– जन, सन, खन धातुका नकारका स्थानमा आत्व होस्, झल् आदिमा हुने सन्प्रत्यय र झल् आदिमा हुने कित् ङित् प्रत्यय पर भएमा ।

**असात/असनिष्ट**– लुङ् आत्मनेपदमा 'असन्+स्+त' यहाँ "तनादिभ्यस्तथासोः"ले सिच्को वैकल्पिक लुक् भयो, 'असन्+त', यहाँ झल्आदिमा हुने ङित्प्रत्यय त पर हुनाले "जनसनखनां सञ्झलोः"ले नकारका स्थानमा आकार भयो, 'अस+आत', दीर्घ भयो, 'असात' सिद्ध भयो । सिच्को लोप नभएको पक्षमा इट्आगम भयो, षत्व, ष्टुत्व भयो, 'असनिष्ट' सिद्ध भयो ।

**असाथाः/असनिष्ठाः**– यस्तै थास्मा पनि 'असन्+स्+थास्' यहाँ "तनादिभ्यस्तथासोः"ले वैकल्पिक सिच् लुक् भएपछि, "जनसनखनां०"ले आत्व भयो, 'असाथाः' सिद्ध भयो । सिच्को लुक् नभएका पक्षमा इट् आगम षत्व, ष्टुत्व भयो, 'असनिष्ठाः' सिद्ध भयो ।

| सन् लुङ् आ.- पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुक्ष | असात/असनिष्ट | असनिषाताम् | असनिषत |
| मध्यमपुरुष | असाथाः/असनिष्ठाः | असनिषाथाम् | असनिढ्वम् |
| उत्तमपुरुष | असनिषि | असनिष्वहि | असनिष्महि |

**लृङ्मा** असनिष्यत् । असनिष्यत आदि रूप हुन्छन् ।

**क्षणु** धातु हिंसा गर्नु अर्थमा छ । उकारको इत्सञ्ज्ञा लोप हुन्छ । यो धातु स्वरितेत् उभयपदी हो । (सेट्, सकर्मक )

**लट्मा** क्षणोति, क्षणुते आदि । **लिट्मा** चक्षाण । चक्षणे आदि । **लुट्मा** क्षणितासि, क्षणितासे आदि । **लृट्मा** क्षणिष्यति । क्षणिष्यते आदि । **लोट्मा** क्षणोतु । क्षणुताम् आदि । **लङ्परस्मैपदमा** अक्षणोत्, अक्षणुताम्, अक्षण्वन्, अक्षणोः आदि रूप हुन्छन् । आत्मनेपदका रूप तल दिइन्छ । रूप सिद्धिप्रक्रिया आफै ऊह गर्नु ।

| क्षण् लङ् आ- **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | अक्षणुत | अक्षण्वाताम् | अक्षण्वत |
| मध्यमपुरुष | अक्षणुथाः | अक्षण्वाथाम् | अक्षणुध्वम् |
| उत्तमपुरुष | अक्षण्वि | अक्षण्वहि/अक्षणुवहि | अक्षण्महि/अक्षणुमहि |

**विधिलिङ्मा** क्षणुयात् क्षण्वीत आदि । **आशीर्लिङ्मा** क्षण्यात् । क्षणिषीष्ट आदि रूप हुन्छन् ।

**ह्म्यन्तेति**– लुङ्मा "ह्म्यन्त क्षण"ले वृद्धि निषेध हुन्छ ।

**अक्षणीत्**– लुङ् परस्मैपदमा 'अक्षण्+इस्+ईत्' यहाँ "वदव्रज०"ले पाएको वृद्धि "नेटि"ले निषेध भयो, पुनः "अतो हलादेः०"ले पाएको वृद्धि "ह्म्यन्त क्षण०"ले निषेध भयो, सलोप, दीर्घ, 'अक्षणीत्' सिद्ध भयो । यस्तै प्रकारले अक्षणिष्टाम्, अक्षणिषुः आदि रूप हुन्छन् ।

अक्षत, अक्षणिष्ट । अक्षथाः, अक्षणिष्ठाः ॥ **क्षिणु** च ॥४॥ उप्रत्यये लघूपधस्य गुणो वा । क्षेणोति, क्षिणोति । क्षेणिता । अक्षेणीत्, अक्षित, अक्षेणिष्ट ॥

---

**लुङ् आत्मनेपदमा अक्षत/अक्षणिष्ट**– त र थास्मा "तनादिभ्यस्तथासोः"ले सिच्को वैकल्पिक लुक् भएपछि, 'अक्षण्+त' यहाँ, "अनुदात्तोपदेश०"ले अनुनासिकलोप भयो, 'अक्षत' सिद्ध भयो । सिच्को लुक् नभएको पक्षमा सिच्को इट्, षत्व, ष्टुत्व भयो, 'अक्षणिष्ट' सिद्ध भयो ।

बाँकी रूप- अक्षणिषाताम्, अक्षणिषत । अक्षथाः/अक्षणिष्ठाः, अक्षणिषाथाम्/अक्षणिढ्वम् । अक्षणिषि, अक्षणिष्वहि, अक्षणिष्महि ।

**लृङ्मा** अक्षणिष्यत्, अक्षणिष्यत आदि रूप हुन्छन् ।

**क्षिणु** धातु हिंसा अर्थमा छ । यो धातु उदित् उभयपदी हो । (सेट् सकर्मक )

**(वा.) उप्रत्यये इति**– उप्रत्यय पर भएमा लघूपध गुण विकल्पले होस्, उपधासंज्ञा भएपछि गुण हुने हुनाले यो गुण संज्ञापूर्वक छ । अतः "संज्ञापूर्वको विधिरनित्यः" यो परिभाषा लगाएर आत्रेय आदि (महर्षि) वैयाकरणले उप्रत्यय पर भएमा लघूपध गुण हुँदैन भन्छन् । कसैले हुन्छ भन्छन् । अतः वैकल्पिक गुण हुन्छ ।

**क्षेणोति/क्षिणोति**– लट् परस्मैपदमा 'क्षिण्+उ+ति' यहाँ "पुगन्तलघूपस्य च"ले नित्य उपधागुण पाएकोमा "उप्रत्यये लघूपधगुणो वा"ले वैकल्पिक गुण भयो, उकारको "सार्वधातुकार्धधातुकयोः"ले गुण भयो, 'क्षेणोति' सिद्ध भयो । लघूपध गुण नभएको पक्षमा उकारको गुण भयो, 'क्षिणोति' सिद्ध भयो । यसरी यी दुई रूप सिद्ध भए ।

यस्तै प्रकारले सर्वत्र लघूपध गुण विकल्पले हुन्छ । वस्, मस् र वहे, महेमा वैकल्पिक लघूपध गुण भएपछि, "लोपश्चास्यान्यतरस्यां०"ले उप्रत्ययको वैकल्पिक लोप हुन्छ । अथवा उप्रत्ययको लोप गरेपछि पनि "प्रत्ययलोपे०" लाएर गुण हुन्छ । अतः वस्, मस्मा उ प्रत्ययको लोप पक्षमा दुई दुई रूप र लोप नभएको पक्षमा २×२ रूप गरी चार चार रूप हुन्छन् ।

क्षिण् लट् परस्मैपद (लघूपधगुण भएका पक्षमा)–

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | क्षेणोति | क्षेणुतः | क्षेण्वन्ति |
| मध्यमपुरुष | क्षेणोसि | क्षेणुथः | क्षेणुथ |
| उत्तमपुरुष | क्षेणोमि | क्षेण्वः/क्षेणुवः | क्षेण्मः/क्षेणुमः |

क्षिण् लट् परस्मैपद (लघूपधगुण नभएका पक्षमा)–

| | | | |
|---|---|---|---|
| प्रथमपुरुष | क्षिणोति | क्षिणुतः | क्षिण्वन्ति |
| मध्यमपुरुष | क्षिणोषि | क्षिणुथः | क्षिणुथ |
| उत्तमपुरुष | क्षिणोमि | क्षिण्व/क्षिणुवः | क्षिण्म/क्षिणुमः |

लट् आत्मनेपदमा पनि क्षेणुते आदि र क्षिणुते आदि दुई थरी रूप हुन्छन् । वहि, महिमा परस्मैपदका व,म,मा जस्तै चार चार रूप हुन्छन् ।

**लिट्मा** चिक्षेण, चिक्षिणे आदि । **लुट्मा** क्षेणितासि, क्षेणितासे आदि । **लृट्मा** क्षेणिष्यति, क्षेणिष्यते आदि । **लोट्मा** क्षिणोतु/क्षेणोतु, क्षिणुताम् आदि । **लङ्मा** अक्षेणोत्/अक्षिणोत्, अक्षिणुत/अक्षेणुत आदि । **विधिलिङ्मा** क्षेणुयात्/क्षिणुयात्, क्षेण्वीत/क्षिण्वीत आदि । **आशीर्लिङ्मा** क्षिण्यात्/क्षेणिषीष्ट आदि । **लुङ्मा** अक्षेणीत्, अक्षित/अक्षेणिष्ट आदि रूप हुन्छन् । तमा पाक्षिक

**तृणु** अदने ॥५॥ तृणोति, तर्णोति; तृणुते, तर्णुते ॥ **डुकृञ्** करणे ॥६॥ करोति ॥

**(सू.नं. ५७२.) अत उत्सार्वधातुके ६।४।११०॥**

उप्रत्यायान्तस्य कृञोऽकारस्य उः स्यात् सार्वधातुके क्ङिति ।) कुरुतः ॥

**६७६. न भकुर्छुराम् ८।२।७९॥**

भस्य कुर्छुरोश्चोपधाया न दीर्घः । कुर्वन्ति ॥

**६७७. नित्यं करोतेः ६।४।१०८॥**

करोतेः प्रत्ययोकारस्य नित्यं लोपो म्वोः परयोः । कुर्वः । कुर्मः ।

---

सिज्लुक् हुन्छ । **लृङ्मा** अक्षेणिष्यत्, अक्षेणिष्यत आदि रूप हुन्छन् ।

**तृणु** धातु खानु अर्थमा छ । यो धातु उदित्, उभयपदी हो । (सेट्, सकर्मक ) यस धातुमा पनि क्षिणु धातुमा जस्तै लघूपध गुण वैकल्पिक हुन्छ । **लट्लकारमा परस्मैपदमा** तर्णोति/तृणोति आदि र **आत्मनेपदमा** तर्णुते/तृणुते । आदि रूप क्षिणु धातुमा जस्तै प्रक्रिया भएर बन्दछन् । फरक के छ भने यहाँ लघूपध गुण हुँदा अर् .गुण हुन्छ । अरू लकारमा पनि रूपहरू त्यस्तै प्रकारले ऊह गर्नू ।

**डुकृञ्**धातु गर्नु अर्थमा छ । यो धातु ञित्वात् उभयपदी, अनिट्, सकर्मक हो ।

**करोति**– कृधातुदेखि लट्, तिप्, शप्लाई बाधेर उप्रत्यय, उप्रत्ययलाई आर्धधातुकसंज्ञा "**सार्वधातुकार्धधातुकयोः०**"ले अर्गुण भयो, 'कर्+उ+ति' करुलाई अङ्गसंज्ञा, उकारका स्थानमा गुण भएर ओकारादेश भयो, 'करोति' सिद्ध भयो ।

**अत उदिति**– उप्रत्यान्त कृञ्धातुका अकारका स्थानमा ह्रस्वउकार होस्, सार्वधातुकसंज्ञक कित्, ङित्प्रत्यय पर भएमा ।

**कुरुतः**– तस्मा पूर्ववत् 'कर्+उ+तस्' भएपछि "अत उत्सार्वधातुके"ले उप्रत्ययान्त कृञ्धातुको अकार (कर्को अकार)का स्थानमा उकार आदेश भयो, 'कुरुतस्' रुत्व, विसर्ग, भयो, 'कुरुतः' सिद्ध भयो । अत उत्मा उत् यहाँ [९६] तपर ग्रहण गरेकोले लघूपधगुण हुँदैन । लघूपधगुण भएको भए "कोरुतः" यस्तो अनिष्ट रूप हुन्थ्यो ।

**कुर्वन्ति**– झिमा पूर्ववत् 'कृ+उ+अन्ति', गुण, 'करु+अन्ति', उत्व, 'कुरु+अन्ति', "इको यणचि"ले यण् कुर्वन्ति भएपछि, रेफान्त धातु कुर् हुनाले कुका उकारको "हलि च"ले दीर्घ पाएमा-

**न भेति**– भसंज्ञक अङ्गका स्थानमा र कुर् छुर्का उपधाका स्थानमा दीर्घ नहोस् । यहाँ कुर्को उपधा छ र "न भकुर्छुराम्"यो सूत्रले दीर्घ निषेध, 'कुर्वन्ति' सिद्ध भयो ।

मध्यमपुरुष सिप्, थस्, थमा करोषि, कुरुथः कुरुथ पूर्ववत् सिद्ध हुन्छन् । उत्तमपुरुष मिप्मा करोमि, पूर्ववत् सिद्ध हुन्छ ।

**नित्यमिति**– कृधातुदेखि पररहेका प्रत्ययका उकारको नित्य लोप होस्, मकार र वकार पर भएमा ।

**कुर्वः, कुर्मः**– वस्, मस्मा पूर्ववत् 'करु+वस्', 'करु+मस्' भएपछि, "अत उत् सार्वधातुके"ले उत्व भयो, 'कुरु+वस्', 'कुरु+मस्' भयो यहाँ, "लोपश्चास्यान्यतरस्यां"ले वैकल्पिक उकारको लोप पाएमा "नित्यं करोतेः"ले नित्य लोप भयो, 'कुर्+वस्', 'कुर्+मस्' भयो, "हलि च"ले दीर्घ पाएमा "न भकुर्छुराम्"ले निषेध भयो, 'कुर्वः', 'कुर्मः' यी रूप सिद्ध भए ।

कृ उ वस् यहाँ लोपलाई बाधेर परत्वात् गुण नै हुन्छ, गुण भएपछि परत्वात् उत्व हुन्छ,

---

९६ तकार पर ग्रहण गरेको सावर्ण्य निषेधका निमित्त हो । विधीयमान अण् हुनाले सवर्णसंज्ञा स्वतः निषिद्ध छ, हुँदैन । अतः तपर करण व्यर्थ हुन्छ र त्यो व्यर्थ भएर उकारका स्थानभा गुणनिषेध गर्छ ।

कुरुते । चकार, चक्रे । कर्तासि, कर्तासे । करिष्यति, करिष्यते । करोतु, कुरुताम् । अकरोत्, अकुरुत ॥

---

अनि "नित्यं करोतेः"ले उप्रत्ययको लोप हुन्छ । लोप पहिले गरेमा पनि "प्रत्ययलोपे०" लाएर उत्व हुन्छ, यद्वा आभीयत्वेन लोप असिद्ध हुन्छ र उप्रत्यय पर मानेर उत्व हुन्छ । उत्मा तकार पर गर्नु व्यर्थ हुने हुनाले गुण हुँदैन । उकारको स्थानिवद्भाव भएर अच् पर पनि हुन्न । "नपदान्त०"ले दीर्घ विधि गर्दा स्थानिवद्भाव निषेध गर्छ । अतः दीर्घ पाउँछ र "न भकुर्छुराम्"ले निषेध गर्नु पर्छ । परस्मैपदका रूप सबै सिद्ध गरेर देखाइयो । आत्मनेपदका रूप तल दिइन्छ ।

| कृ लट् आ. | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | कुरुते | कुर्वाते | कुर्वते |
| | मध्यमपुरुष | कुरुषे | कुर्वाथे | कुरुध्वे |
| | उत्तमपुरुष | कुर्वे | कुर्वहे | कुर्महे |

यी रूपहरूको सिद्धि गर्दा परस्मैपदमा उल्लिखित सूत्रहरू र प्रक्रिया याद राख्नु पर्छ अरू विशेष कुरा केही छैन ।

गोपायाञ्चकार एधाञ्चक्रे आदिमा कृधातुको लिट्मा हुने प्रक्रिया थाहा भैसकेको हुनाले यहाँ सुबोध्य छ । लिट् परस्मैपदमा चकार, चक्रतुः, चक्रुः । चकर्थ, चक्रथुः, चक्र । चकार चकर, चकृव, चकृम । यी रूप हुन्छन् । **आत्मनेपदमा** चक्रे, चक्राते, चक्रिरे आदि रूप हुन्छन् ।

**लुट् परस्मैपदमा** कर्ता कर्तारौ, कर्तारः । कर्तासि आदि । **आत्मनेपदमा** कर्ता, कर्तारौ, कर्तारः । कर्तासे आदि । **लृट्मा** "ऋद्धनोः स्ये"ले इट् हुन्छ । **परस्मैपदमा** करिष्यति आदि । **आत्मनेपदमा** करिष्यते आदि रूप हुन्छन् ।

| **कृ लोट् पर.–** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | करोतु/कुरुतात् | कुरुताम् | कुर्वन्तु |
| | मध्यमपुरुष | कुरु/कुरुतात् | कुरुतम् | कुरुत |
| | उत्तमपुरुष | करवाणि | करवाव | करवाम |

"करवाणि किमद्य ते प्रियं वद मे वल्गितकण्ठ कोकिल" ( श्रीमद्भागवत ।)

| कृ **लोट् आ.–** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | कुरुताम् | कुर्वाताम् | कुर्वताम् |
| | मध्यमपुरुष | कुरुष्व | कुर्वाथाम् | कुरुध्वम् |
| | उत्तमपुरुष | करवै | करवावहै | करवामहै |
| **कृ.लङ् पर.–** | प्रथमपुरुष | अकरोत् | अकुरुताम् | अकुर्वन् |
| | मध्यमपुरुष | अकरोः | अकुरुतम् | अकुरुत |
| | उत्तमपुरुष | अकरवम् | अकुर्व | अकुर्म |
| **कृ लङ् आ–** | प्रथमपुरुष | अकुरुत | अकुर्वाताम् | अकुर्वत |
| | मध्यमपुरुष | अकुरुथाः | अकुर्वाथाम् | अकुरुध्वम् |
| | उत्तमपुरुष | अकुर्वि | अकुर्वहि | अकुर्महि |

**६७८. ये च ६।४।१०९**

कृञ उलोपो यादौ प्रत्यये परे। कुर्यात्, कुर्वीत। क्रियात्, कृषीष्ट। अकार्षीत्, अकृत। अकरिष्यत्, अकरिष्यत॥

**६७९. सम्परिभ्यां करोतौ भूषणे ६।१।१३७।**

**६८०. समवाये च ६।१।१३८**

सम्परिपूर्वस्य करोतेः सुट् स्याद् भूषणे सङ्घाते चार्थे।

---

**ये चेति**– कृञ् धातुदेखि पर रहेका उप्रत्ययको लोप होस् यकार आदिमा हुने प्रत्यय पर भएमा।

**कुर्यात्**– विधिलिङ् परस्मैपदमा पूर्ववत् 'कुरु+यास्ति' भएपछि "ये च"ले यकारादि प्रत्यय यास् पर हुनाले कुरुका उकारको लोप भयो, 'कुर्+यास्+ति' उपधादीर्घ पाएको "न भकुर्छुराम्"ले निषेध भयो, इकारको लोप, सकारको लोप भयो, 'कुर्यात्' सिद्ध भयो।

बाँकी रूप- कुर्याताम्, कुर्युः। कुर्याः, कुर्यातम्, कुर्यात। कुर्याम्, कुर्याव, कुर्याम। विधिलिङ् आत्मनेपदमा सबै विभक्ति अपित् सार्वधातुक हुनाले ङित् हुन्छन्। अतः "अत उत्सार्वधातुके"ले सर्वत्र उत्व हुन्छ। सीयुट्को सकार लोप भएपछि अच् पर हुनाले सर्वत्र यण् हुन्छ।

| कृ वि.लि.आ.- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | कुर्वीत | कुर्वीयाताम् | कुर्वीरन् |
| | मध्यमपुरुष | कुर्वीथाः | कुर्वीयाथाम् | कुर्वीध्वम् |
| | उत्तमपुरुष | कुर्वीय | कुर्वीवहि | कुर्वीमहि |

आशीर्लिङ्मा "रिङ् शयग्लिङ्क्षु"ले ऋकारका स्थानमा रिङ् आदेश हुन्छ। यासुट्, सीयुट् र सुट्का सकारको लोप हुँदैन। उश्चले लिङ् कित् हुनाले गुण हुँदैन।

| कृ आ.लि.पर.- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | क्रियात् | क्रियास्ताम् | क्रियासुः |
| | मध्यमपुरुष | क्रियाः | क्रियास्तम् | क्रियास्त |
| | उत्तमपुरुष | क्रियासम् | क्रियास्व | क्रियास्म |
| कृ आ.लि.आ.- | प्रथमपुरुष | कृषीष्ट | कृषीयास्ताम् | कृषीरन् |
| | मध्यमपुरुष | कृषीष्ठाः | कृषीयास्थाम् | कृषीढ्वम् |
| | उत्तमपुरुष | कृषीय | कृषीवहि | कृषीमहि |

**अकार्षीत्**– कृ, लुङ्, अट्, परस्मैपद तिप्, च्लि, सिच्, इट्निषेध, 'अकृ+स्+ति' यहाँ तिका इकारको लोप, ईट् 'अकृस्+ईत्', "सिचि वृद्धिः परस्मैपदेषु"ले आर्वृद्धि, षत्व भयो, 'अकार्षीत्' सिद्ध भयो।

बाँकी रूप– अकार्ष्टाम्, अकार्षुः। अकार्षीः अकार्ष्ट, अकार्ष्ट। अकार्षम्, अकार्ष्व, अकार्ष्म।

**अकृत**– कृ लुङ्, आत्मनेपद त, च्लि, सिच्, 'अकृ+स्+त' यहाँ सिच्को इट्निषेध, कित्व, गुणनिषेध, "ह्रस्वादङ्गात्"ले सिच्को लोप भयो, 'अकृत' सिद्ध भयो। बाँकी रूप- अकृषाताम् अकृषत। अकृथाः, अकृषाथाम्, अकृढ्वम्। अकृषि, अकृष्वहि, अकृष्महि।

**लृङ्मा** अकरिष्यत्। अकरिष्यत आदि रूप हुन्छन्।

**सम्परिभ्यामिति**– सम्शब्द र परिशब्द पूर्वमा हुने कृ धातुको सुट् आगम होस्, भूषण अर्थ र सङ्घात अर्थ बुझिँदामा।

---

संस्करोति । अलङ्करोतीत्यर्थः । संस्कुर्वन्ति । सङ्घीभवन्तीत्यर्थः । सम्पूर्वस्य क्वचिदभूषणेऽपि सुट् । "संस्कृतं भक्षाः" इति ज्ञापकात् ॥

६८१. **उपात्प्रतियत्नवैकृतवाक्याध्याहारेषु च ६।१।१३९॥**

उपात्कृञः सुट् स्यादेष्वर्थेषु चात्प्रागुक्तयोरर्थयोः । प्रतियत्नो गुणाधानम् । विकृतमेव, वैकृतं विकारः । वाक्याध्याहार आकाङ्क्षितैकदेशपूरणम् । उपस्कृता कन्या । उपस्कृता ब्राह्मणाः । एधो दकस्योपस्कुरुते । उपस्कृतं भुङ्क्ते । उपस्कृतं ब्रूते । **वनु** याचने ॥७॥

---

**संस्करोति–** सम् उपसर्ग पूर्वमा हुने कृ धातुदेखि लट्, तिबादि भएर संकरोति रूप सिद्ध भएपछि, "सम्परिभ्यां करोतौ०"ले सुट् भयो, सुट्को अनुबन्ध लोप भएर स् बाँकी रह्यो, स् यो टित् हुनाले 'करोति'को अगाडि भयो । मकारको अनुस्वार भयो, 'संस्करोति' सिद्ध भयो । संस्करोति यसको सिगार्छ भन्ने अर्थ हो ।

**संस्कुर्वन्ति–** संपूर्वका कृ धातुको लट्मा संकुर्वन्ति भएपछि "समवाये च"ले सुट् भयो, पूर्ववत् 'संस्कुर्वन्ति' सिद्ध भयो । संस्कुर्वन्ति यसको सङ्घको रूपमा जम्मा हुन्छन् भन्ने अर्थ हो । यहाँ यौटा व्यक्तिमा सङ्घत्व नहुने हुँदा बहुवचनको प्रयोग गरिएको छ ।

**संपूर्वस्येति–** संपूर्वक कृ धातुको भूषण र सङ्घात अर्थ नबुझिए पनि कहीं कहीं सुट् हुन्छ, "संस्कृतं भक्षाः" यो सूत्रज्ञापक हुनाले ।

**उपादिति–** उप शब्ददेखि पररहेको कृञ् धातुको सुट् आगम होस्, प्रतियत्न वैकृत र वाक्याध्याहार अर्थ बुझिँदामा । चकार पढ्नाले भूषण र समवाय अर्थ बुझिँदामा पनि सुट् आगम होस् ।

**विकृतमेवेति–** वैकृत भनेको विकार हो । 'विकृतमेव' यस विग्रहमा स्वार्थिक अण्प्रत्यय भएर वैकृत शब्द सिद्ध हुन्छ ।

**वाक्यध्याहारेति–** वाक्याध्याहार भनेको बोलिएका वाक्यको आकाङ्क्षित अवयव अर्थात् अभिप्राय पूरा गर्नु हो ।

**भूषण अर्थमा–** 'उपस्कृता कन्या' (सिगारिएकी कन्या) यहाँ भूषण अर्थमा "उपात्प्रतियत्नवैकृतवाक्याध्याहारेषु च" यस सूत्रले 'उप+कृता' यहाँ सुट् भयो, 'उपस्कृता' सिद्ध भयो ।

**सङ्घीभवन अर्थमा–**'उपस्कृता ब्राह्मणाः' (जम्मा भएका बाहुन) यहाँ सङ्घात अर्थमा उक्त सूत्रले सुट् भयो, 'उप+कृता' भयो, 'उपस्कृताः' सिद्ध भयो ।

**प्रतियत्न अर्थात् गुणाधान अर्थमा–** 'एधो दकस्योपस्कुरुते' (दाउराले पानीको गुण लिन्छ, अर्थात् दाउराले पानीको गुण लिएर चिसो हुन्छ) यहाँ दकशब्द उदक शब्दको अर्थमा लिएको छ ।" 'उपस्कुरुते' यहाँ प्रतियत्न अर्थमा सुट् भयो ।

**वैकृत अर्थमा–** 'उपस्कृतं भुङ्क्ते' (विकृत चीज खान्छ) यहाँ वैकृत अर्थमा "उपात्प्रतियत्न०" यस सूत्रले सुट् भयो, 'उपस्कृतम्' सिद्ध भयो ।

**वाक्याध्याहार अर्थमा–** 'उपस्कृतं ब्रूते' (वाक्यको आकाङ्क्षित अवयव पूरा गरेर बोल्छ) यहाँ वाक्याध्याहार अर्थमा उक्त सूत्रले सुट् भयो, 'उपस्कृतम्' सिद्ध भयो ।

**वनु** धातु माग्नु अर्थमा छ । यो धातु उदित्, आत्मनेपदी हो । (सेट्, सकर्मक )

वनुते । ववने ॥ **मनु** अवबोधने ॥८॥ मनुते । मेने । मनिता । मनिष्यते । मनुताम् । अमनुत । मन्वीत । मनिषीष्ट । अमत, अमनिष्ट । अमनिष्यत ॥

**इति तनादयः ॥८ ॥**

---

**वनुते**– वन् लट्, त, उप्रत्यय, एत्व, 'वनु+ते' तेमा ङित्त्व, हुनाले "सार्वधातुकार्धधातुकयोः"ले पाएको गुण "क्ङिति च"ले निषेध भयो, 'वनुते' सिद्ध भयो । वन्वाते, वन्वते आदि अरू रूप तनु धातुमा जस्तै हुन्छन् ।

**ववने**– वन् धातुदेखि लिट् लकार भयो, लकारका स्थानमा आत्मनेपद त भयो, तका स्थानमा एश् भयोल 'वन्+ए', द्वित्व, 'वन्+वन्+ए', हलादि शेष, 'ववन्+ए' भएपछि, "अत एकहल्मध्ये"ले एत्व र अभ्यासको लोप पाएमा वकारादि धातु हुनोले "न शसददवादिगुणानाम्"ले एत्व र अभ्यासको लोप निषेध भयो, 'ववने' सिद्ध भयो ।

अरू सबै लकारमा यसका रूप तनु धातुको आत्मनेपदमा जस्तै हुन्छन् ।

**मनु** धातु जान्नु अर्थमा छ । यो धातु उदित्, आत्मनेपदी हो । (सेट्, सकर्मक) दिवादिको मन्धातु अनिट् हो । अनुदात्तको परिगणनमा मन्य् भनेर दैवादिक धातु लिइएको छ ।

**मनुते**– मन् लट्, त, एत्व, उ प्रत्यय भयो, 'मनुते' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप वन् धातुमा जस्तै प्रक्रियाद्वारा सिद्ध गर्नू ।

**मेने**– लिट्मा पूर्ववत् 'ममन्+ए' भएपछि, एत्व र अभ्यास लोप भयो, 'मेने' सिद्ध भयो । लिट्का सबै रूप तल दिइन्छ -

| **मन् लिट्**– | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | मेने | मेनाते | मेनिरे |
| | मध्यमपुरुष | मेनिषे | मेनाथे | मेनिध्वे |
| | उत्तमपुरुष | मेने | मेनिवहे | मेनिमहे |

धातु सेट् हुनाले वलादि प्रत्ययको इट् हुन्छ । लुट् आदि लकारका शुरुका एक एक रूप मूलमा नै दिएको छ । सबै लकारमा मनु धातुका तनु धातुका जस्तै रूप हुन्छन् । प्रक्रिया पनि उस्तै हुन्छ ।

**तनादिगण सकियो ।**

-------------

## अथ क्र्यादयः

**डुक्रीञ्** द्रव्यविनिमये ॥१॥

**६८२. क्र्यादिभ्यः श्ना ३।१।८१॥**

शपोऽपवादः । क्रीणाति । "ई हल्यघोः" । क्रीणीतः । "श्नाभ्यस्तयोरातः" । क्रीणन्ति । क्रीणासि । क्रीणीथः । क्रीणीथ । क्रीणामि । क्रीणीवः । क्रीणीमः । क्रीणीते । क्रीणाते । क्रीणते । क्रीणीषे । क्रीणाथे । क्रीणीध्वे । क्रीणे । क्रीणीवहे । क्रीणीमहे । चिक्राय । चिक्रियतुः । चिक्रियुः । चिक्रयिथ, चिक्रेथ । चिक्रिय ।

---

**अब क्र्यादिगण शुरू हुन्छ ।**

**डुक्रीञ्** धातु द्रव्यको विनिमय गर्नु अर्थमा छ । विनिमय भनेको सट्टापट्टा गर्नु हो । पुरानो जमानामा वस्तु नै साटासाट गरिन्थ्यो र त्यसैलाई विनिमय मानिन्थ्यो । अहिले सबै वस्तुको सट्टा पैसा नै छ र पैसासँग सबै वस्तु साटिन्छन् र साट्नुलाई किन्नु भनिन्छ । डुक्रीञ् धातुमा डु र ञ्को इत्संज्ञा हुन्छ । क्री धातु बाँकी रहन्छ । यो धातु ञित्वात् उभयपदी हो । (अनिट् सकर्मक)

**क्र्यादिभ्य इति**– क्र्यादिगणपठित धातुदेखि श्नाप्रत्यय होस्, कर्ता अर्थमा विधान गरिएको सार्वधातुकसंज्ञक प्रत्यय पर भएमा । यो श्नाप्रत्यय शप्प्रत्ययको अपवाद अर्थात् बाधक हो ।

**क्रीणाति**– क्री धातुदेखि क्रियाको फल कर्तामा नगएमा "शेषात्कर्तरि०"ले परस्मैपद प्रथमपुरुष एकवचन ति भयो, शप्लाई बाधेर "क्र्यादिभ्यः श्ना"ले श्नाप्रत्यय भयो, शकारको "लशक्वतद्धिते"ले लोप भयो, 'क्री+ना+ति', णत्व भयो, 'क्रीणाति' सिद्ध भयो ।

**क्रीणीतः**– क्री धातुदेखि पूर्ववत् लट् परस्मैपद प्रथमपुरुष द्विवचन तस् भयो, श्नाप्रत्यय भयो, 'क्री+ना+तस्' भएपछि, तस् ङित् छ र "ई हल्यघोः"ले नाका आकारका स्थानमा ईकार भयो, श्नाप्रत्यय ङित् हुनाले क्रीका ईकारका स्थानमा पनि गुण भएन, 'क्रीनी+तस्' यहाँ णत्व, रुत्व, विसर्ग भयो, 'क्रीणीतः' सिद्ध भयो ।

**क्रीणन्ति**– पूर्ववत् झि, झिका स्थानमा अन्त् आदेश भएपछि, 'क्री+ना+अन्ति' "श्नाभ्यस्तयोरातः"ले श्ना प्रत्ययका आकारको लोप भयो, क्रीका इकारका स्थानमा गुणनिषेध भयो, 'क्रीणन्ति' सिद्ध भयो । अरू रूप पनि यस्तैप्रकार ले सिद्ध हुन्छन् -

बाँकी रूप- क्रीणासि, क्रीणीथः, क्रीणीथ । क्रीणामि क्रीणीवः क्रीणीमः ।

आत्मनेपदका सबै रूप मूलमा नै छन्- साधना प्रक्रिया ऊह गर्नू ।

**चिक्राय**- क्री लिट्, तिप्, णल्, 'क्री+अ', द्वित्व, 'क्री+क्री+अ' हलादिशेष, हृस्व, चुत्व, 'चिक्री+अ', "अचो ञ्णिति"ले वृद्धि, 'चिक्रै+अ', आय्आदेश, 'चिक्राय' सिद्ध भयो ।

अतुस् आदि कित् विभक्तिमा यस्तै किसिमले द्वित्वादि भएपछि, श्रि धातुमा जस्तै इयङ् हुन्छ । थल्मा यो धातु अनिट् हुनाले "अचस्तास्वत्"ले इट् आगमको निषेध भएपछि, भारद्वाज नियमले वैकल्पिक इट् आगम हुन्छ । इट् आगम भएको पक्षमा गुण, अय् आदेश हुन्छ । इट् आगम नभएको पक्षमा गुणमात्र हुन्छ । उत्तमपुरुष णल्मा वैकल्पिक वृद्धि, वृद्धि भएको पक्षमा आय् आदेश, गुण भएको पक्षमा अय् आदेश हुन्छ । सबै रूप तल दिइन्छ ।

---

चिक्रिये । क्रेता । क्रेष्यति, क्रेष्यते । क्रीणातु, क्रीणीतात् । क्रीणीताम् । अक्रीणात्, अक्रीणीत ।

---

**की लिट् पर.-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | चिक्राय | चिक्रियतुः | चिक्रियुः |
| मध्यमपुरुष | चिक्रयिथ/चिक्रेथ | चिक्रियथुः | चिक्रिय |
| उत्तमपुरुष | चिक्राय/चिक्रय | चिक्रियिव | चिक्रियिम |

आत्मनेपदमा सर्वत्र इयङ् हन्छ । किनभने क्रादिनियमले नित्य इट् हुने हुनाले हलादि विभक्ति पनि अजादि नै हुन्छन् । ध्वम्ममा "विभाषेटः"ले वैकल्पिक ढत्व हुन्छ ।

**की लिट् आ.-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | चिक्रिये | चिक्रियाते | चिक्रियिरे |
| मध्यमपुरुष | चिक्रियिसे | चिक्रियाथे | चिक्रियिढ्वे/चिक्रियिध्वे |
| उत्तमपुरुष | चिक्रिये | चिक्रियिवहे | चिक्रियिमहे |

**लुट् र लृट्मा** क्रेतासि, क्रेतासे आदि र क्रेष्यति, क्रेष्यते आदि रूप ऊह गर्नू ।

**लोट्मा-** तुका स्थानमा तातङ् भएको पक्षमा तातङ् ङित् हुनाले "ई हल्यधोः" लाग्छ, क्रीणीतात् हुन्छ, नभएको पक्षमा ईत्व हुँदैन क्रीणातु हुन्छ । सिप्मा भने हि पनि ङित् तातङ् पनि ङित् हुनाले दुवै ठाउँमा ईत्व हुन्छ । उत्तमपुरुषमा आट् पित् हुनाले श्नाप्रत्ययको ईत्व हुँदैन । सबै रूप तल दिइन्छ ।

**की लोट् पर-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | क्रीणातु/क्रीणीतात् | क्रीणीताम् | क्रीणन्तु |
| मध्यमपुरुष | क्रीणीहि/क्रीणीतात् | क्रीणीतम् | क्रीणीत |
| उत्तमपुरुष | क्रीणानि | क्रीणाव | क्रीणाम |

"क्रीणीहि भोः फलानीति श्रुत्वा सत्वरमच्युतः ।
फलार्थी धान्यमादाय ययौ सर्वफलप्रदः ॥" (श्रीमद्भागवत ।)

**की लोट् आ.-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | क्रीणीताम् | क्रीणाताम् | क्रीणताम् |
| मध्यमपुरुष | क्रीणीष्व | क्रीणाथाम् | क्रीणीध्वम् |
| उत्तमपुरुष | क्रीणै | क्रीणावहै | क्रीणामहै |

**की लङ् पर-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अक्रीणात् | अक्रीणीताम् | अक्रीणन् |
| मध्यमपुरुष | अक्रीणाः | अक्रीणीतम् | अक्रीणीत |
| उत्तमपुरुष | अक्रीणाम् | अक्रीणीव | अक्रीणीम |

**की लङ् आ-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | अक्रीणीत | अक्रीणाताम् | अक्रीणत |
| मध्यमपुरुष | अक्रीणीथाः | अक्रीणाथाम् | अक्रीणीध्वम् |
| उत्तमपुरुष | अक्रीणि | अकीणीवहि | अकीणीमहि |

---

क्रीणीयात्, क्रीणीत । क्रीयात्, क्रेषीष्ट । अक्रैषीत्, अक्रेष्ट । अक्रेष्यत्, अक्रेष्यत ॥ **प्रीञ्** तर्पणे कान्तौ च ॥२॥ प्रीणाति, प्रीणीते ॥ **श्रीञ्** पाके ॥३॥ श्रीणाति, श्रीणीते ॥ **मीञ्** हिंसायाम् ॥४॥

---

| | | | | |
|---|---|---|---|---|
| **क्री वि.लि.पर-** | प्रथमपुरुष | क्रीणीयात् | क्रीणीयाताम् | क्रीणीयुः |
| | मध्यमपुरुष | क्रीणीयाः | क्रीणीयातम् | क्रीणीयात |
| | उत्तमपुरुष | क्रीणीयाम् | क्रीणीयाव | क्रीणीयाम |
| **क्री वि.लि.आ.-** | प्रथमपुरुष | क्रीणीत | क्रीणीयाताम् | क्रीणीरन् |
| | मध्यमपुरुष | क्रीणीथाः | क्रीणीयाथाम् | क्रीणीध्वम् |
| | उत्तमपुरुष | क्रीणीय | क्रीणीवहि | क्रीणीमहि |

विधिलिङ् परस्मैपदमा यासुट् ङित् हुनाले श्नाका आकारको "ई हल्यघोः"ले ईत्व हुन्छ । आत्मनेपदमा ईकार सीयुट्को हो, नाका आकारको "श्नाभ्यस्तयोः०"ले लोप हुन्छ । आशीर्लिङ् आत्मनेपदमा तिङ् भित्रको तङ् आर्धधातुक छ । अतः "सार्वधातुकमपित्" लाग्दैन ङित् हुन्न र धातुको गुण हुन्छ । क्रेषीष्ट आदि रूप हुन्छन् । स्पष्ट छ ।

| **क्री आ.लि.पर.-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | क्रीयात् | क्रीयास्ताम् | क्रीयासुः |
| | मध्यमपुरुष | क्रीयाः | क्रीयास्तम् | क्रीयास्त |
| | उत्तमपुरुष | क्रीयासम् | क्रीयास्व | क्रीयास्म |
| **क्री आ.लि.आ.-** | प्रथमपुरुष | क्रेषीष्ट | क्रेषीयायास्ताम् | क्रेषीरन् |
| | मध्यमपुरुष | क्रेषीष्ठा | क्रेषीयास्थाम | क्रेषीढ्वम् |
| | उत्तमपुरुष | क्रेषीय | क्रेषीवहि | क्रेषीमहि |
| **क्री लुङ् पर.-** | प्रथमपुरुष | अक्रैषीत् | अक्रैष्टाम् | अक्रैषुः |
| | मध्यमपुरुष | अक्रैषीः | अक्रैष्टम् | अक्रैष्ट |
| | उत्तमपुरुष | अक्रैषम् | अक्रैष्व | अक्रैष्म । |
| **क्री लुङ् आ .-** | प्रथमपुरुष | अक्रेष्ट | अक्रेषाताम् | अक्रेषत |
| | मध्यमपुरुष | अक्रेष्ठाः | अकेषाथाम् | अक्रेढ्वम् |
| | उत्तमपुरुष | अक्रेषि | अक्रेष्वहि | अक्रेष्महि |

**लृङ्** परस्मैपदमा अक्रेष्यत् आदि । **आत्मनेपदमा** अक्रेष्यत आदि रूप हुन्छन् । सामान्य क्री धातुको किन्ने अर्थ हुन्छ । विउपसर्गको योगमा विक्री गर्ने अर्थ हुन्छ ।

जस्तै- विक्रीणीते (विक्री गर्छ ।)

**प्रीञ्** धातु अघाउनु र खुशी हुनु इच्छा गर्नु अर्थमा छ । यो धातु ञित् उभयपदी हो (अनिट् खुशी हुनु अर्थमा अकर्मक इच्छा गर्नु अर्थमा सकर्मक ) यस धातुका रूप पनि क्री धातुका जस्तै हुन्छन् । प्रीणाति प्रीणीते यहाँ की धातुमा जस्तै णत्व हुन्छ ।

**श्री** धातु पकाउनु अर्थमा छ । यो धातु ञित् उभयपदी हो । (अनिट्, सकर्मक ) यसका रूप पनि क्री धातुका जस्तै हुन्छन् । श्रीणाति श्रीणीते यहाँ पनि णत्व हुन्छ ।

**मीञ्** धातु हिंसा गर्नु अर्थमा छ । यो धातु ञित् उभयपदी हो । (अनिट, अकर्मक)

---

**६८३. हिनुमीना ८।४।१५॥**

उपसर्गस्थान्निमित्तात्परस्यैतयोर्नस्य णः स्यात् । प्रमीणाति, प्रमीणीते । मीनातीत्यात्वम् । ममौ । मिम्यतुः । ममिथ, ममाथ ।

---

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| **मी लट् पर.-** | प्रथमपुरुष | मीनाति | मीनीतः | मीनन्ति |
| | मध्यमपुरुष | मीनासि | मीनीथः | मीनीथ |
| | उत्तमपुरुष | मीनामि | मीनीवः | मीनीमः |
| **मी लट् आ.-** | प्रथमपुरुष | मीनीते | मीनाते | मीनते |
| | मध्यमपुरुष | मीनीषे | मीनाथे | मीनीध्वे |
| | उत्तमपुरुष | मीने | मीनीवहे | मीनीमहे |

**हिन्विति**– उपसर्गमा रहेका निमित्तदेखि पर रहेको हि धातु सम्बन्धी श्नु प्रत्ययको अवयव र मी धातुसम्बन्धी श्ना प्रत्ययको अवयव नकारका स्थानमा णत्व होस् ।

**प्रमीणाति**– प्रउपसर्गपूर्वक मी धातुको लट्मा 'प्रमीनाति' यो रूप सिद्ध भएपछि "हिनुमीना"ले उपसर्गमा रहेको निमित्त प्रको रेफ छ र त्यसदेखि पर रहेको मीधातुसम्बन्धी श्नाप्रत्ययको अवयव मीनातिका नकारका स्थानमा "हिनुमीना" यो सूत्रले णकार भयो, 'प्रमीणाति' सिद्ध भयो ।

**प्रमीणीते**– प्र उपसर्ग पूर्वमा हुने मी धातुको लट् आत्मनेपदमा प्रमीनीते भएपछि पूर्ववत् हिनु मीनाले णत्व भयो, 'प्रमीणीते' सिद्ध भयो ।

"मीनातिमीनोतिदीङां ल्यपि च" भन्ने सूत्रले शित् भिन्न एच् निमित्तक प्रत्यय पर भएमा आत्व होस् भन्छ । त्यसको आशय गुणको र वृद्धिको निमित्त भएका प्रत्यय भनेको हो । अतः गुण र वृद्धिको निमित्त नभएको कित् ङित् प्रत्यय पर भएमा आत्व हुँदैन ।

**लिट्मा** परस्मैपदमा तिप् सिप् र मिप्को विषयमा आत्व हुन्छ । कित् लिट्को विषयमा आत्व हुँदैन ।

**ममौ**– मी धातुको अकित् लिट्, णल्को विवक्षामा "मीनातिमिनोतिदीङां ल्यपि च"ले आत्व भयो, मा धातुदेखि लिट्, तिप्, णल्, 'मा+अ' णल्का स्थानमा "आत औ णलः"ले औकारादेश भयो, द्वित्व, अभ्यासकार्य, वृद्धि भयो, 'ममौ' सिद्ध भयो ।

**मिम्यतुः, मिम्युः**– तस्मा एच् निमित्तक प्रत्ययको विषय नहुनाले "मीनातिमिनोति०"ले आत्व भएन, मी धातुदेखि लिट्, तस्, तस्का स्थानमा अतुस् भयो, मीको द्वित्व, अभ्यासकार्य भयो, 'मिमी+अतुस्' भयो, इयङ्लाई बाधेर "एरनेकाचो"ले यण् भयो, 'मिम्यतुः' सिद्ध भयो । यस्तै प्रकारले 'मिम्युः' पनि सिद्ध भयो ।

**ममिथ/ममाथ**– मी धातुको थल्का विषयमा पूर्वसूत्रले आत्व भयो, अनि माधातुदेखि लिट्, सिप्, थल्, 'मा+थ', यहाँ पूर्ववत् बाध्यबाधक भाव भएपछि थल्को "ऋतो भाद्वाजस्य" लाएर वैकल्पिक इट् आगम भयो, द्वित्व, अभ्यासकार्य भयो, 'ममा+इथ', "आतोलोप इटि च"ले आकारको लोप भयो, 'ममिथ' सिद्ध भयो । इट् आगम नभएको पक्षमा द्वित्वादि भयो, 'ममाथ' सिद्ध भयो ।

**मिम्यथुः/मिम्य**– अथुस्को विवक्षामा मीको आत्व भएन । अतुस्मा जस्तै द्वित्वादि भएपछि यण् भएर 'मिम्यथुः' सिद्ध भयो । यस्तै प्रकारले 'अ'मा 'मिम्य' पनि सिद्ध भयो ।

मिम्ये । माता । मास्यति । मीयात्, मासीष्ट । अमासीत् । अमासिष्टाम् । अमास्त ॥ **षिञ्** बन्धने ॥५॥ सिनाति, सिनीते । सिषाय, सिष्ये । सेता ॥ **स्कुञ्** आप्लवने ॥६॥

**६८४. स्तन्भुस्तुन्भुस्कन्भुस्कुन्भुस्कुञ्भ्यः श्नुश्च ३।१।८१॥**

चात् श्ना । स्कुनोति, स्कुनाति ।

---

**ममौ**– उत्तमपुरुष णल्को विषयमा मीको आत्व भयो, द्वित्व, अभ्यासकार्य भएर वृद्धि भयो, 'ममौ' सिद्ध भयो ।

**मिम्यिव, मिम्यिम**– व, म,को विवक्षामा आत्व भएन । मी धातुदेखि लिट्, वस्, मस्, 'मी+व', 'मी+म' यहाँ क्रादिनियमले व, म,को नित्य इट् आगम भयो, द्वित्व, अभ्यासकार्य, यण् भयो, 'मिम्यिव', 'मिम्यिम' यी दुई रूप सिद्ध भए । आत्मनेपद ध्वम्मा "विभाषेटः"ले वैकल्पिक ढत्व हुन्छ । अरू पक्रिया आफै ऊह गर्नू । सबै रूप तल दिइन्छ -

**मी लिट् आ.-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | मिम्ये | मिम्याते | मिम्यिरे |
| मध्यमपुरुष | मिम्यिषे | मिम्याथे | मिम्यिढ्वे/मिम्यिध्वे |
| उत्तमपुरुष | मिम्ये | मिम्यिवहे | मिम्यिमहे |

लुट्, लृट्, आशीर्लिङ् आत्मनेपद, लुङ् र लृङ्का विवक्षामा "मीनातिमिनोति०"ले मीका स्थानमा आत्व हुन्छ । मा धातु बन्दछ । अनुदात्त धातु हुनाले "आर्धधातुकस्येड्०"ले पाएको इट् आगमको "एकाच उपदेशे"ले निषेध हुन्छ ।

**लुट्मा** माता, मातारौ, मातारः । मातासि, मातासे आदि रूप हुन्छन् ।

**लृट्मा** मास्यति, मास्यते आदि । लोट्मा मीनातु, मीनीताम् आदि ।

**विधिलिङ्मा** मीनीयात्, मीनीत, आदि । **आशीर्लिङ्मा** मीयात्, मासीष्ट आदि । **लुङ्मा** अमासीत्[१७], अमास्त आदि । **लृङ्मा** अमास्यत्, अमास्यत आदि रूप हुन्छन् ।

**षिञ्** धातु बाध्नु अर्थमा छ । यो धातु षोपदेश, उभयपदी, अनिट्, सकर्मक हो ।

लट् आदि सबै लकारका रूपको दिग्दर्शन– सिनाति, सिनीते । सिषाय, सिष्ये । सेतासि, सेतासि । सेष्यति, सेष्यते । सिनातु, सिनीताम् । असिनात्, असिनीत । सिनीयात्, सिनीत । सीयात्, सेषीष्ट । असैषीत्, असेष्ट । असेष्यत्, असेष्यत आदि रूप हुन्छन् ।

**स्कुञ्** धातु पौड्नु र उद्धार गर्नु अर्थमा छ । यो धातु ञित्, उभयपदी हो । (अनिट्, सकर्मक)

**स्तन्भुस्तुन्भु इति**– स्तन्भु धातु, स्तुन्भु धातु, स्कन्भु धातु, स्कुन्भु धातु, स्कुञ् धातुदेखि श्नु प्रत्यय होस्, चकार पढ्नाले श्ना प्रत्यय पनि होस् ।

**स्कुनोति/स्कुनाति**– स्कु धातुदेखि लट्, तिप्, शप्लाई बाधेर "क्र्यादिभ्यः श्ना"ले श्नु प्रत्यय पाएमा बाधेर "स्तन्भुस्तुन्भुस्कन्भु०"ले श्नु प्रत्यय भयो, 'स्कु+नु+ति' श्नुको उकारको स्थानमा गुण भयो, नुमा ङित्त्व हुनाले स्कुका उकारका स्थानमा गुण भएन, 'स्कुनोति' सिद्ध भयो । चकार पढ्नाले श्ना प्रत्यय पनि हुन्छ भनेकोले श्ना प्रत्यय भयो श्ना प्रत्ययमा ङित्त्व हुनाले गुणनिषेध भयो, 'स्कुनाति' सिद्ध भयो ।

---

१७ लुङ् परस्मैपदमा "आर्धधातुकस्येड् वलादेः"ले पाएको इट्आगमको "एकाच उपदेशे०"ले निषेध भएपछि, "यमरमनमातां सक् च"ले इट्आगम र सक्आगम हुन्छ ।

स्कुनुते, स्कुनीते । चुस्काव, चुस्कुवे । स्कोता । अस्कौषीत्, अस्कोष्ट ॥ स्तन्भ्वादयश्चत्वारः सौत्राः । सर्वे रोधनार्थाः परस्मैपदिनः ॥

---

**स्कुनुते, स्कुनीते**- आत्मनेपद पक्षमा 'स्कु+ते' श्नु प्रत्यय 'स्कु+नु+ते' यहाँ तेमा ङित्त्व हुनाले नुका उकारका स्थानमा गुण भएन, नुमा ङित्त्व हुनाले स्कुका उकारका स्थानमा गुण भएन, 'स्कुनुते' सिद्ध भयो । श्नाप्रत्यय भएका पक्षमा 'स्कु+ना+ते' यहाँ नामा ङित्त्व हुनाले स्कुका उकारका स्थानमा गुण भएन तेमा ङित्व हुनाले "ई हल्यघोः"ले नाका आकारका स्थानमा ईत्व भयो, 'स्कुनीते' सिद्ध भयो । यसरी चार थरी रूप भए । यस्तै प्रकारले परस्मैपदमा र आत्मनेपदमा अरू रूपहरू पनि सिद्ध गर्नू ।

**लिट्मा** "शर्पूर्वा खयः"ले "हलादिःशेषः"लाई बाध्दछ । थल्मा वैकल्पिक इट् आगम व, म,मा नित्य इट् आगम हुन्छ । कित् लिट्मा उवङ् हुन्छ ।

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| स्कु लिट् पर.- | प्रथमपुरुष | चुस्काव | चुस्कुवतुः | चुस्कुवुः |
| | मध्यमपुरुष | चुस्कविथ/चुस्कोथ | चुस्कुवथुः | चुस्कुव |
| | उत्तमपुरुष | चुस्काव/चुस्कव | चुस्कुविव | चुस्कुविम |
| स्कु लिट् आ.- | प्रथमपुरुष | चुस्कुवे | चुस्कुवाते | चुस्कुविरे |
| | मध्यमपुरुष | चुस्कुविषे | चुस्कुवाथे | चुस्कुविढ्वे/चुस्कुविध्वे |
| | उत्तमपुरुष | चुस्कुवे | चुस्कुविवहे | चुस्कुविवहे/चुस्कुविमहे |

अरू लुट् आदि आर्धधातुक लकारका रूप पूर्ववत् सिद्ध गर्नू । सार्वधातुक लकारमा परस्मैपद र आत्मनेपदमा श्नु र श्ना प्रत्ययको भेदले चार थरी रूप हुने हुँदा दिग्दर्शन गराइन्छ ।

**लोट्** परस्मैपदमा स्कुनोतु/स्कुनुतात्, स्कुनातु/स्कुनीतात् आदि । **आत्मनेपदमा** स्कुनुताम्, स्कुनीताम् आदि । **लङ्** परस्मैपदमा अस्कुनोत्, अस्कुनात् आदि । **आत्मनेपदमा** अस्कुनुत, अस्कुनीत आदि । **विधिलिङ्** परस्मैपदमा स्कुनुयात्, स्कुनीयात् आदि । **आत्मनेपदमा** स्कुन्वीत, स्कुनीत आदि रूप हुन्छन् ।

**स्तन्भ्वादय इति**- स्तन्भु आदि पूर्वोक्त चारधातु सौत्र (सूत्रपठित) हुन् । सबै रोक्नु अर्थमा छन् र परस्मैपदी हुन् । (यी चार वटै धातु सेट्, सकर्मक)

चार वटै धातुका सार्वधातुक लकारमा श्ना प्रत्यय र श्नु प्रत्ययका भेदले दुई थरी रूप हुन्छन् ।

**स्तभ्नोति**- स्तम्भ लट्, तिप्, "स्तन्भुस्तुन्भु०"ले श्नु प्रत्यय 'स्तन्भ्+नु+ति' "अनिदितां हलः०"ले नकारको लोप भयो, नुका उकारका स्थानमा गुण भएर ओकार भयो, 'स्तभ्नोति' सिद्ध भयो । यस्तै प्रकारले स्तभ्नुतः, स्तभ्नुवन्ति आदि रूप श्नु प्रत्यय भएको पक्षमा हुन्छन् ।

**स्तभ्नाति**- चकार पढ्नाले श्ना भएको पक्षमा 'स्तन्भ्+ना+ति', यहाँ "अनिदितां०"ले नकारको लोप भएर 'स्तभ्नाति' सिद्ध भयो । यस्तै प्रकारले स्तभ्नीतः, स्तभ्नन्ति आदि रूप श्ना प्रत्यय भएको पक्षमा हुन्छन् ।

**लिट्मा** "शपूर्वा खयः" लाग्छ नकारका स्थानमा अनुस्वार परसवर्ण हुन्छ । तस्तम्भ, तस्तम्भे आदि रूप हुन्छन् । **लुट्मा** स्तम्भिता आदि । लृट्मा स्तम्भिष्यति आदि रूप हुन्छन् । **लोट्मा** श्नु प्रत्यय भएको पक्षमा तिप् र सिप्मा तु र हिका स्थानमा तातङ् भएको पक्षमा गुणनिषेध हुन्छ । अरू ङित् विभक्तिमा पनि गुण निषेध हुन्छ । झिमा उवङ्, मिप्, वस्, मस्,मा आट्, पित् हुनाले गुण अव् आदेश हुन्छ । श्नु प्रत्यय भएको पक्षमा लोट्का सबै रूप-

**६८५. हलः श्नः शानज्झौ ३।१।८३।।**

हलः परस्य श्नः शानजादेशः स्याद्धौ परे । स्तभान ॥

**६८६. जॄस्तन्भुम्रुचुम्लुचुग्रुचुग्लुचुग्लुञ्चुश्विभ्यश्च ३।१।५८।।**

च्लेरङ् वा स्यात् ॥

**६८७. स्तन्भेः ८।३।६७।।**

उपसर्गस्थान्निमित्तात्परस्य स्तन्भेः सौत्रस्य षः स्यात् । व्यष्टभत् । अस्तम्भीत् ॥

---

**स्तन्भ् लोट्** (श्नु प्रत्यय भएको पक्षमा)-

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | स्तभ्नोतु/भ्नुतात् | स्तभ्नुताम् | स्तभ्नुवन्तु |
| मध्यमपुरुष | स्तभ्नुहि/भ्नुतात् | स्तभ्नुतम् | स्तभ्नुत |
| उत्तमपुरुष | स्तभ्नवानि | स्तभ्नवाव | स्तभ्नवाम |

स्तन्भ धातुको लोट्मा श्ना प्रत्यय भएको पक्षमा 'हि'मा विशेष प्रक्रिया छ ।

**हल इति-** हल्देखि पर रहेका श्नाका स्थानमा शानच् आदेश होस् हि पर भएमा ।

**स्तभान–** स्तन्भ् धातुदेखि विध्यादि अर्थमा लोट्, सिप्, हि, श्ना, "अनिदितां०"ले नलोप भएपछि, 'स्तभ्+ना+हि', यहाँ हल् स्तभ्को भकारदेखि पर श्नाको नाका स्थानमा "हलः श्नः०"ले शानच् आदेश भयो, च् को इत्संज्ञा, लोप, भयो, अनेकाल्त्वात् ना सबैका स्थानमा शान भयो, स्थानिवत्त्वात् प्रत्ययत्व आएपछि शकारको इत्संज्ञा लोप भयो । 'स्तभान+हि' भयो, "अतो हेः"ले हिको लुक् भयो, 'स्तभान' सिद्ध भयो । आशीर्वाद अर्थको लोट्मा "तुह्योः०"ले तातङ् भएका पक्षमा स्नाको आकारका स्थानमा इत्व भएर 'स्तभ्नीतात्' हुन्छ । तातङ् नभएको पक्षमा विध्यादि लोट्मा जस्तै हिका स्थानमा शानच् हुन्छ र 'स्तभान' सिद्ध हुन्छ । श्ना प्रत्यय भएको पक्षमा लोट्का सबै रूप तल दिइएको छ-

**स्तन्भ् लोट्** (श्ना प्रत्यय भएको पक्षमा)-

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | स्तभ्नातु/स्तभ्नीतात् | स्तभ्नीताम् | स्तभ्नन्तु |
| मध्यमपुरुष | स्तभान/स्तभ्नीतात् | स्तभ्नीतम् | स्तभ्नीत |
| उत्तमपुरुष | स्तभ्नानि | स्तभ्नाव | स्तभ्नाम |

**लङ्मा** अस्तभ्नोत्, अस्तभ्नात् आदि । **विधिलिङ्मा** स्तभ्नुयात्, स्तभ्नीयात् आदि । **आशीर्लिङ्मा** स्तभ्यात्, स्तभ्यास्ताम् आदि रूप हुन्छन् । **लुङ्मा** विशेष प्रक्रिया छ ।

**जॄस्तम्भु इति-** जॄ, स्तम्भु, म्रुचु, म्लुचु, ग्रुचु, ग्लुचु र ग्लुञ्चु धातुदेखि पर रहेका च्लिका स्थानमा अङ् विकल्पले होस् ।

**स्तन्भेरिति–** उपसर्गमा रहेका निमित्तदेखि पर रहेका सूत्रपठित स्तम्भ धातुका दन्त्य सकारका स्थानमा मूर्धन्य सकार होस् ।

**व्यष्टभत्-**स्तम्भ् धातुदेखि लुङ् लकार अट्, ति, च्लि प्रत्यय भएपछि च्लिका स्थानमा "जॄस्तम्भु०"ले अङ् भयो, 'अस्तम्भ्+अ+ति', यहाँ 'अ' ङित् हुनाले "अनिदितां०"ले उपधाका नकारको लोप भयो, तिका इकारको "इतश्च"ले लोप भयो,'अस्तभत्' वि उपसर्गको पूर्वप्रयोग भयो, 'वि+अस्तभत्' "स्तम्भेः"ले सकारको षत्व भयो, यण् भयो, 'व्यष्टभत्' सिद्ध भयो । वि उपसर्ग नलागेमा अस्तभत्, अस्तभताम् आदि रूप हुन्छन् ।

**अस्तम्भीत्/व्यष्टम्भीत्-** "जॄस्तम्भु०"ले च्लिका स्थानमा अङ् नभएको पक्षमा सिच् भयो, इट्

**युञ्** बन्धने ॥७॥ युनाति, युनीते । योता ॥ **क्नूञ्** शब्दे ॥८॥ क्नूनाति, क्नूनीते । क्नविता ॥ **द्रूञ्** हिंसायाम् ॥९॥ द्रूणाति, द्रूणीते ॥ **पूञ्** पवने ॥१०॥

**६८८. प्वादीनां ह्रस्वः ७।३।८०॥**

पूञ्-लूञ्-स्तॄञ्-कॄञ्-वॄञ्-धूञ्-शॄ-पॄ-वॄ-भॄ-मॄ-दॄ-जॄ-झॄ-धॄ-नॄ-कॄ-ॠ-गॄ-ज्या-री-ली-ब्ली-प्लीनां चतुर्विंशतेः शिति ह्रस्वः । पुनाति, पुनीते ।

---

आगम तिका इकारको लोप ईट् आगम 'अस्तम्भ्+इस्+ईत्', "वदव्रज०"ले पाएको वृद्धिको "नेटि"ले निषेध भयो, नकारको अनुस्वार, परसवर्ण भयो, 'अस्तम्भीत्' सिद्ध भयो । यहाँ पनि वि उपसर्ग लागेमा 'व्यष्टम्भीत्' सिद्ध हुन्छ । उपसर्ग नलागेमा अस्तम्भीत्, अस्तम्भिष्टाम्, अस्तम्भिषुः आदि रूप हुन्छन् ।

लुङ्बाहेक अन्यत्र स्तुन्भु, स्कन्भु, स्कुन्भु धातुका पनि स्तन्भु धातुका जस्तै रूप हुन्छन् । लुङ्मा स्तन्भु धातुका च्लि प्रत्ययका स्थानमा "जृस्तम्भु०"ले वैकल्पिक अङ् हुन्छ र सिच् पनि हुन्छ । तर स्तुन्भु, स्कन्भु, र स्कुन्भु धातुका च्लिका स्थानमा सिच् मात्र हुन्छ, अङ् हुँदैन । यत्ति फरक छ । रूपहरू आफैं सिद्ध गर्नू ।

**युञ्** धातु बाँध्नु अर्थमा छ । यो धातु उभयपदी हो । (अनिट् सकर्मक ) आर्धधातुक लकारमा स्कु धातुका जस्तै यु धातुका पनि रूप हुन्छन् । सार्वधातुकमा यसमा श्ना प्रत्यय मात्र हुन्छ । श्नु प्रत्यय हुन्न, यति फरक छ । लुङ् परस्मैपदमा अयौषीत्, अयौष्टाम् आदि रूप हुन्छन् "सिचि वृद्धिः०"ले वृद्धि हुन्छ ।

**क्नूञ** धातु शब्द गर्नु अर्थमा छ । ञित् उभयपदी हो । (सेट् अकर्मक) लट् परस्मैपदमा क्नूनाति, क्नूनीत, क्नूनन्ति आदि । आत्मनेपदमा क्नूनीते, क्नूनाते, क्नूनते आदि रूप हुन्छन् ।

**लिट्मा** अभ्यासको "कुहोश्चुः"ले चुत्व हुन्छ । परस्मैपदमा चुक्नाव आदि । आत्मनेपदमा **चुक्नुवे** आदि रूप हुन्छन् ।

**लुट्मा** क्नवितासि, क्नवितासे आदि । **लृट्मा** क्नविष्यति, क्नविष्यते आदि । **लङ्मा** अक्नावीत्, अक्नविष्ट आदि रूप हुन्छन् ।

**द्रूञ्** धातु हिंसा गर्नु अर्थमा छ । यो धातु उभयपदी हो । (सेट्, सकर्मक ) लट् आदि लकारमा द्रूणाति, द्रूणीते । दुद्राव, दुद्रुवे । द्रवितासि, द्रवितासे । द्रविष्यति, द्रविष्यते । द्रूणातु, द्रूणीताम् । अद्रूणात्, अद्रूणीत । द्रूणीयात्, द्रूणीत । द्रूयात्, द्रविषीष्ट । अद्रावीत्, अद्रविष्ट । अद्रविष्यत्, अद्रविष्यत आदि रूप हुन्छन् ।

**पूञ्** धातु पवित्र गर्नु अर्थमा छ । यो धातु उभयपदी हो । (सेट्, सकर्मक )

**प्वादीनामिति-** पूञ्, लूञ्, स्तॄञ्, कॄञ्, वॄञ्, धूञ् , शॄ, पॄ, वॄ, भॄ, मॄ, दॄ, जॄ, झॄ, धॄ, नॄ, कॄ, ॠ, गॄ, ज्या, री, ली, ब्ली, प्ली यी २४ धातुका स्थानमा अन्त्य अल्का स्थानमा ह्रस्व होस् शित् प्रत्यय पर भएमा ।

**पुनाति-** पू धातुदेखि लट्, परस्मैपद तिप्, श्ना प्रत्यय, 'पूनाति' यहाँ "प्वादीनां ह्रस्वः"ले पूका ऊकारका स्थानमा ह्रस्व भयो, 'पुनाति' सिद्ध भयो ।

**पू लट् पर.-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | पुनाति | पुनीतः | पुनन्ति |
| मध्यमपुरुष | पुनासि | पुनीथः | पुनीथ |
| उत्तमपुरुष | पुनामि | पुनीवः | पुनीमः |

**पुनीते-** पू धातुदेखि लट् आत्मनेपद त, एत्व, श्नाप्रत्यय 'पूनाते' यहाँ "प्वादीनां ह्रस्वः"ले

पविता ॥ **दॄ** विदारणे ॥११॥ दृणाति, ॥ **लूञ्** छेदने ॥१२॥ लुनाति, लुनीते ॥ **स्तॄञ्** आच्छादने ॥१३॥ स्तृणाति । "शर्पूर्वाः खयः" । तस्तार । तस्तरतुः । तस्तरे । स्तरीता, स्तरिता ।

---

ह्रस्व भयो, 'पुनाते' भयो, ते यो ङित् हुनाले "ई हल्यघोः"ले आकारका स्थानमा ईकार भयो, 'पुनीते' सिद्ध भयो ।

| **पू लट् आ-** | प्रथमपुरुष | पुनीते | पुनाते | पुनते |
|---|---|---|---|---|
| | मध्यमपुरुष | पुनीषे | पुनाथे | पुनीध्वे |
| | उत्तमपुरुष | पुने | पुनीवहे | पुनीमहे |

**लिट्मा** पुपाव, पुपुवे आदि । **लुट्मा** पवितासि, पवितासे आदि । **लृट्मा** पविष्यति, पविष्यते आदि । **लोट्मा** पुनातु, पुनीताम् आदि । **लङ्मा** अपुनात्, अपुनीत आदि । **विधिलिङ्मा** पुनीयात्, पुनीत आदि । **आशीर्लिङ्मा** पूयात्, पविषीष्ट आदि । **लुङ्मा** अपावीत्, अपाविष्ट आदि । **लृङ्मा** अपविष्यत्, अपविष्यत आदि रूप हुन्छन् ।

**दॄ** धातु फोर्नु अर्थमा छ । यो धातु परस्मैपदी हो । (सेट् सकर्मक )

**लट्मा** दृणाति आदि । **लिट्मा** "शृदृप्रां ह्रस्वो वा"ले एक पक्षमा ह्रस्व हुन्छ । ह्रस्व भएको पक्षमा यण् हुन्छ । ह्रस्व नभएको पक्षमा "ऋच्छत्यृताम्"ले गुण हुन्छ । दद्रतुः, ददरतुः आदि रूप हुन्छन् । **लुट्मा** दरीता, दरिता आदि । **लृटमा** दरीष्यति, दरिष्यति आदि । **लोट्मा** दृणातु आदि । **लङ्मा** अदृणात् आदि । **विधिलिङ्मा** दृणीयात् आदि । **आशीर्लिङ्मा** दीर्यात् आदि । **लुङ्मा** अदारीत् आदि । **लृङ्मा** अदरीष्यत्, अदरिष्यत् आदि रूप हुन्छन् । यो धातु प्वादि धातुको क्रमानुसार धूञ् धातु भन्दा पछाडि राख्नु उचित हुन्छ ।

**लूञ्** धातु काट्नु अर्थमा छ । यो धातु उभयपदी हो । (सेट्, सकर्मक ) लट् आदि लकारमा लुनाति, लुनीते । लुलाव, लुलुवे आदि रूप हुन्छन् । सर्वत्र पूधातुमा जस्तै प्रक्रिया हुन्छ ।

**स्तॄञ्** धातु ढाक्नु अर्थमा छ । यो धातु ञित्, उभयपदी हो । (सेट्, सकर्मक )

**स्तृणाति-** लट् परस्मैपद 'स्तृनाति' भएपछि ह्रस्व भयो, 'स्तृनाति', "ऋवर्णान्नस्य०"ले णत्व भयो, 'स्तृणाति' सिद्ध भयो ।

**स्तृणीते-** आत्मनेपदमा 'स्तृनाते' ह्रस्व, श्नाका आकारको ईत्व, णत्व भयो, 'स्तृणीते' सिद्ध भयो । यसैगरी अरू रूप सिद्ध गर्नू ।

**शर्पूवा इति-** लिट्मा "शर्पूर्वाः खयः" लाग्दछ ।

**तस्तार-** स्तॄ लिट्, परस्मैपद, तिप्, णल्, 'स्तॄ+अ', द्वित्व, अभ्यासका ॠकारको ह्रस्व, अर्, 'स्तर्+स्तॄ+अ' "शर्पूर्वाः खयः"ले अभ्यासको हलादिशेष भयो, 'तस्तॄ+अ', "ऋच्छत्यृताम्"ले गुण, उपधावृद्धि भयो, 'तस्तार' सिद्ध भयो ।

**तस्तरतुः-** अतुस्मा पूर्ववत् 'तस्तॄ+अतुस्' भएपछि "सार्वधातुकार्धधातुकयोः"ले पाएको गुण, "क्ङिति च"ले निषेध, भएपछि, "ऋच्छत्यॄताम्"ले गुण भयो, 'तस्तरतुः' सिद्ध भयो । यस्तै प्रकारले तस्तरुः इत्यादि रूप हुन्छन् । आत्मनेपदमा पनि परस्मैपदमा जस्तै प्रक्रिया भएर तस्तरे, तस्तराते, तस्तरिरे आदि रूप हुन्छन् । लुट्मा र लृट्मा "वृतो वा"ले इट्को वैकल्पिक दीर्घ हुन्छ ।

**लुट् परस्मैपदमा** स्तरीता, स्तरिता आदि । **लृट् परस्मैपदमा** स्तरीष्यति, स्तरिष्यति आदि रूप हुन्छन् । आत्मनेपदमा पनि यसैगरी रूप ऊह गर्नू । **लोट् र लङ्का** आत्मनेपद र परस्मैपदमा पूर्ववत् रूपहरू ऊह गर्नू ।

स्तृणीयात्, स्तृणीत । स्तीर्यात् ॥

**६८९. लिङ्सिचोरात्मनेपदेषु ७।२।४२॥**

वृङ्वृञ्भ्यामृदन्ताच्च परयोर्लिङ्सिचोरिड् वा स्यात्तङि ॥

**६९०. न लिङि ७।२।३९॥**

वृत इटो लिङि न दीर्घः । स्तरिषीष्ट । उश्चेति कित्त्वम् । स्तीर्षीष्ट । "सिचि च परस्मैपदेषु" । अस्तारीत् । अस्तारिष्टाम् । अस्तारिषुः । अस्तरीष्ट, अस्तरिष्ट, अस्तीर्ष्ट ॥

---

**विधिलिङ्मा** "प्वादीनां ह्रस्वः"ले ऋकारको ह्रस्व हुन्छ । परस्मैपदमा स्तृणीयात् आदि । आत्मनेपदमा स्तृणीत आदि रूप हुन्छन् ।

**स्तीर्यात्**– आशीर्लिङ् परस्मैपदमा 'स्तृ+यात्' यहाँ ऋकारका स्थानमा इर्, "हलि च"ले इर्का इकारका स्थानमा दीर्घ ईकार भयो, 'स्तीर्यात्' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप सिद्ध गर्नू ।

**लिङ्सिचोरिति**– वृङ् धातु वृञ् धातु दीर्घ ऋकारान्त धातुदेखि पर रहेका लिङ् र सिच्को इट् आगम विकल्पले होस्, तङ् पर भएमा ।

**न लिङि**– वृङ् धातु, वृञ् धातु र ऋकारान्त धातुका इट्का स्थानमा दीर्घ नहोस् । इट् नभएको पक्षमा "उश्च"ले लिङ्को कित्व हुन्छ ।

**स्तरिर्षीष्ट/स्तीर्षीस्ट**- स्तृ धातुदेखि आर्शीलिङ् आत्मनेपद प्रथमपुरूष एकवचन त 'स्तृ+त' सीयुट्, सुट्, 'स्तृ+सीस्त', "लिङ्सिचोरात्मनेपदेषु"ले वैकल्पिक इट्आगम "सार्वधातुकार्ध०"ले गुण, 'स्तर्+इसीस्त', "वृतो वा"ले इट् आगमको दीर्घ पाएकोमा "न लिङि"ले निषेध, दुवै सकारको स्थानमा षकार, ष्टुत्व भयो, 'स्तरिषीष्ट' इट् आगम नभएको पक्षमा 'स्तृ+सीस्त' यहाँ "उश्च"ले लिङ्-सीस्तको कित्त्वभयो, कित्त्वात् गुणनिषेध भएपछि, "ऋत इद्धातोः"ले ऋका स्थानमा इर्, "हलि च"ले इकारको स्थानमा दीर्घ ईकार 'स्तीर्सीस्त', षत्व, ष्टुत्व भयो, 'स्तीर्षीष्ट' सिद्ध भयो ।

**सिचि चेति**- लुङ्मा "सिचि च परस्मैपदेषु"ले "वृतो वा"ले पाएको दीर्घको निषेध हुन्छ ।

**अस्तारीत्**– लुङ् परस्मैपदमा स्तृ लुङ्, अट्आगम परस्मैद, प्रथमपुरूष एकवचन ति, च्लि, सिच्, सिच्को इट्आगम, 'अस्तृ+इस्+ति' तिका इकारको "इतश्च"ले लोप ईट् आगम, "सिचि वृद्धिः परस्मैपदेषु"ले वृद्धि, 'अस्तार्+इस्+ईत्', यहाँ "वृतो वा"ले सिच्का इट् आगमको दीर्घ पाएकोमा "सिचि च परस्मैपदेषु"ले निषेध भयो, सिच्को स् को "इट ईटि"ले लोप भयो, सवर्णदीर्घ भयो, 'अस्तारीत्' सिद्ध भयो । 'अस्तारीत्' यहाँ दीर्घनिषेधको फल छैन, "समुद्रे पर्जन्यवत्०" न्यायले निषेध गर्ने मात्र हो । अस्तारिष्टाम् अस्तारिषुः आदिमा फल छ ।

**अस्तारिष्टाम्**– द्विवचन तस्मा पूर्ववत् 'अस्तार्+इस्ताम्' भएपछि, "वृतो वा"ले पाएको दीर्घ "सिचि परस्मैपदेषु"ले निषेध भयो, षत्व, ष्टुत्व भयो, 'अस्तारिष्टाम्' सिद्ध भयो ।

**अस्तरीष्ट/अस्तरिष्ट/अस्तीर्ष्ट**– स्तृ लुङ्, अट् आगम आत्मनेपद प्रथमपुरुष एकवचन त, सिच्, "लिङ्सिचोरात्मनेपदेषु"ले वैकल्पिक इट् आगम, 'अस्तृ+इस्+त' गुण, 'अस्तर्+इस्+त', इट्को "वृतो वा"ले वैकल्पिक दीर्घ, षत्व, ष्टुत्व भयो, 'अस्तरीष्ट' सिद्ध भयो । दीर्घ नभएको पक्षमा पनि षत्व, ष्टुत्व, 'अस्तरिष्ट' सिद्ध भयो । इट् आगम नभएको पक्षमा 'अस्तृ+स्+त', यहाँ "उश्च"ले सिच्, कित् भएकोले ऋकारका स्थानमा गुण भएन, इर् भयो, "हलि च"ले इकारको दीर्घ भयो, षत्व, ष्टुत्व भयो, 'अस्तीर्ष्ट' सिद्ध भयो । यसरी तीन रूप सिद्ध भए । आताम्, झ, आदिमा पनि यही रीतले तीन तीन रूप हुन्छन् ।

---

**कॄञ्** हिंसायाम् ॥१४॥ कृणाति, कृणीते । चकार, चकरे ॥ **वॄञ्** वरणे ॥१५॥ वृणाति, वृणीते । ववार, ववरे । वरिता, वरीता । उदोष्ठचेत्युत्वम् । वूर्यात् । वरिषीष्ट, वूर्षीष्ट । अवारीत् । अवारिष्टाम् । अवरिष्ट, अवरीष्ट, अवूर्ष्ट ॥ **धूञ्** कम्पने ॥१६॥ धुनाति, धुनीते ।

---

**कॄञ्** धातु हिंसा गर्नु अर्थमा छ । यो धातु ञित्, उभयपदी हो । (सेट्, सकर्मक )

**कृणाति, कृणीते**– यहाँ "प्वादिनां ह्रस्व"ले ॠकारको ह्रस्व हुन्छ । परस्मैपद आत्मनेपदमा पूर्ववत् रूपहरू सिद्ध हुन्छन् ।

**चकार, चकरे**– लिट् लकारमा "ॠच्छत्यॄताम्"ले गुण हुन्छ । अरू सबै प्रक्रिया ऊह गर्नू । दिग्दर्शनका निमित्त परस्मैपद र आत्मनेपदका एक एक रूप दिइएको हो । अरू लकारमा पनि कृधातुका रूप स्तृधातुका जस्तै हुन्छन् ।

**वॄञ्** धातु वरण गर्नु स्वीकार गर्नु अर्थमा छ । यो धातु उभयपदी हो । (सेट्, सकर्मक )

**लट्मा** वृणाति, वृणीते आदि । **लिट्मा** ववार, ववरे आदि । **लुट्मा** वरीतासि, वरितासि, वरीतासे, वरितासे आदि । **लृट्मा** वरीष्यति, वरिष्यति, वरीष्यते, वरिष्यते आदि रूप हुन्छन् । **लोट्, लङ् र विधिलिङ्मा** रूपहरू पूर्वप्रक्रिया सम्झेर सिद्ध गर्नू । **आशीर्लिङ्मा** विशेष प्रक्रिया छ ।

**वूर्यात्**- आशीर्लिङ् परस्मैपदमा 'वॄ+यात्' भएपछि, "ॠत इद्धातोः"लाई बाधेर "उदोष्ठ्यपूर्वस्य"ले उर् भयो, "हलि च"ले दीर्घ भयो, 'वूर्यात्' सिद्ध भयो । यस्तै प्रकारले वूर्यास्ताम् आदि रूप सिद्ध हुन्छन् ।

**वरिषीष्ट/वूर्षीष्ट**- आत्मनेपदमा "लिङ्सिचोः"ले वैकल्पिक इट्, गुण, "न लिङि"ले इट्को दीर्घ निषेध भयो, षत्व, ष्टुत्व भयो, 'वरिषीष्ट' सिद्ध भयो । इट् नभएको पक्षमा पूर्ववत् उर् दीर्घ, षत्व, ष्टुत्व भयो, 'वूर्षीष्ट' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप पनि सिद्ध हुन्छन् ।

**अवरीत्**– लुङ् परस्मैपदमा "सिचि वृद्धिः परस्मैपदेषु"ले वृद्धि भयो, "सिचि च परस्मैपदेषु"ले इट्को दीर्घनिषेध भयो, 'अवारीत्' सिद्ध भयो । यस्तै प्रकारले अवारिष्टाम् आदि रूप पनि हुन्छन् ।

**अवरीष्ट/अवरिष्ट/अवूर्ष्ट**– आत्मनेपद तमा च्लि, सिच्, सिच्को वैकल्पिक इट् आगम र पूर्ववत् इट् आगमको वैकल्पिक दीर्घ, भएको पक्षमा 'अवरीष्ट' सिद्ध भयो । दीर्घ नभएको पक्षमा 'अवरिष्ट' सिद्ध भयो । इट् आगम नभएको पक्षमा "उदोष्ठ्यपूर्वस्य"ले उर् "हलि च"ले दीर्घ भयो, 'अवूर्ष्ट' सिद्ध भयो । यसरी तीन रूप हुन्छन् । यस्तै प्रकारले आताम् आदिमा पनि रूप ऊह गर्नू । **लृङ्** परस्मैपदमा अवरीष्यत्, अवरिष्यत् आदि । **आत्मनेपदमा** अवरीष्यत, अवरिष्यत आदि रूप हुन्छन् ।

**धूञ्** धातु कँपाउनु (हल्लाउनु) अर्थमा छ । यो धातु ञित्, उभयपदी हो । (सेट्, सकर्मक) यो धातु भ्वादि, तुदादि, स्वादि, क्र्यादि र चुरादिमा पनि छ । स्वादिमा ह्रस्व धुञ् धातु पनि छ । यी प्रत्येक धातुका लट्, प्रथमपुरुष एकवचनका रूपहरू दिएर कुनै कविले एक पद्य रचना गरेका छन् ।

"धूनोति चम्पकवनानि धुनोत्यशोकं चूतं धुनाति धुवति स्फुटितातिमुक्तम् ।
वायुर्विधूनयति चम्पकपुष्परेणून् यत्कानने धवति चन्दनमञ्जरीश्च ।"

**धुनाति, धुनीते**– धुधातुदेखि लट्, परस्मैपद तिप्मा 'धुनाति' र आत्मनेपद तमा 'धुनीते' यी रूप सिद्ध हुन्छन् । यहाँ "प्वादीनां ह्रस्वः"ले ह्रस्व हुन्छ । अरू प्रक्रिया पनि ऊह गर्नू ।

**दुधाव, दुधुवे**– परस्मैपद लिट्, तिप्मा 'दुधाव' र आत्मनेपद तमा 'दुधुवे' यी रूप बन्दछन् । थल्मा "स्वरतिसूति०"ले वैकल्पिक इट् आगम हुन्छ । व, म, से, ध्वे, वहे,**मा** "स्वरतिसूति०"लाई "श्र्युकः किति"ले निषेध गरेपछि, कादिनियमले नित्य **इट्** आगम **हुन्छ।**

---

धविता, धोता । अधावीत् । अधविष्ट, अधोष्ट ॥ **ग्रह** उपादाने ॥१७॥ गृह्णाति, गृह्णीते । जग्राह, जगृहे ॥

---

**धविता/धोता**– लुट्मा तासि प्रत्ययको "स्वरतिसूति"ले वैकल्पिक इट् आगम हुन्छ । यस्तै प्रकारले लृट्, लृङ्मा स्यप्रत्ययको र लुङ् आत्मनेपदमा सिच्को वैकल्पिक इट् आगम हुन्छ । परस्मैपदमा "स्तुसूधुञ्भ्यः०"ले नित्य इट् हुन्छ ।

**अधावीत्**– यहाँ "स्तुसूधूञ्भ्यः परस्मैपदेषु"ले "स्वरतिसूति"लाई बाधेर नित्य इट् भयो, अधावीत्' सिद्ध भयो ।

**अधविष्ट/अधोष्ट**– लुङ् आत्मनेपदमा "स्वरतिसूति"ले वैकल्पिक इट् भयो, इट् आगम भएको पक्षमा 'अधविष्ट' इट्आगम नभएको पक्षमा 'अधोष्ट' यी दुई रूप सिद्ध भए ।

**ग्रह** धातु ग्रहण गर्नु (लिनु) अर्थमा छ । यो धातु स्वरितेत्, उभयपदी हो । (सेट्, सकर्मक)

**गृह्णाति**– ग्रह धातुदेखि लट्, तिप्, श्ना 'ग्रह+ना+ति', यहाँ ना यो, "सार्वधातुकमपित्"ले ङित् भएको हुनाले "ग्रहिज्यावयि०"ले ग्रहका रेफका स्थानमा सम्प्रसारण ऋ भयो, 'गृ+अह्+नाति' "सम्प्रसारणच्च"ले पूर्वरूप भयो, 'गृह्+नाति', यहाँ "ऋवर्णान्नस्य णत्वं वाच्यम्"ले अट्-हकारले व्यवधान भएको हुनाले णत्व भयो, 'गृह्णाति' सिद्ध भयो । यस्तै प्रकारले तस् आदिमा विभक्तिमा पनि सम्प्रसारण, पूर्वरूप र णत्व हुन्छ ।

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| **ग्रह लट् पर.**– | प्रथमपुरुष | गृह्णाति | गृह्णीतः | गृह्णन्ति |
| | मध्यमपुरुष | गृह्णासि | गृह्णीथः | गृह्णीथ |
| | उत्तमपुरुष | गृह्णामि | गृह्णीवः | गृह्णीमः |
| **ग्रह लट् आ**– | प्रथमपुरुष | गृह्णीते | गृह्णाते | गृह्णते |
| | मध्यमपुरुष | गृह्णीषे | गृह्णाथे | गृह्णीध्वे |
| | उत्तमपुरुष | गृह्णे | गृह्णीवहे | गृह्णीमहे |

**लिट् परस्मैपदमा** अकित् विभक्तिमा द्वित्व भएपछि सम्प्रसारण हुन्छ । कित् विभक्तिमा संप्रसारण गरेपछि द्वित्व हुन्छ ।

**जग्राह**– ग्रह लिट्, तिप्, णल्, द्वित्व, 'ग्रह्+ग्रह्+अ', यहाँ "लिटचभ्यासस्य०"ले अभ्यासको सम्प्रसारण भयो, 'गृह्+ग्रह+अ' भयो, ऋकारका स्थानमा "उरत्"ले अर् भयो, 'गर्ह्+ग्रह्+अ' हलादिशेष भयो, 'गग्रह्+अ', चुत्व, 'जग्रह्+अ', उपधावृद्धि भयो, 'जग्राह' सिद्ध भयो ।

**जगृहतुः**– तस्मा 'ग्रह्+अतुस्' यहाँ "ग्रहिज्या०"ले द्वित्व भन्दा पहिले संप्रसारण भयो, 'गृह्+अतुस्' द्वित्व, 'गृह+गृह्+अतुस्' "उरत्"ले अभ्यासका ऋकारका स्थानमा अर्, 'गर्ह्+गृह्+अतुस्', हलादिशेष, चुत्व, 'जगृह्+अतुस्' लघूपध गुणको "क्ङिति च"ले निषेध भयो, 'जगृहतुः' सिद्ध भयो ।

| **ग्रह लिट्**– | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | जग्राह | जगृहतुः | जगृहुः |
| | मध्यमपुरुष | जग्रहिथ | जगृहथुः | जगृह |
| | उत्तमपुरुष | जग्राह/जग्रह | जगृहिव | जगृहिम |

लिट् आत्मनेपदमा सबै विभक्ति कित् हुनाले "ग्रहिज्या०"ले पहिले सम्प्रसारण भएपछि द्वित्व हुन्छ ।

**६९१. ग्रहोऽलिटि दीर्घः ७।२।३७।।**

एकाचो ग्रहेर्विहितस्येटो दीर्घो न तु लिटि । ग्रहीता । गृह्णातु । "हलः श्नः शानज्झौ" इति श्नः शानजादेशः । गृहाण । गृह्यात्, ग्रहीषीष्ट ।

---

**जगृहे**- 'ग्रह+ए', "ग्रहिज्यावयि०"ले संप्रसारण पूर्वरूप 'ग्रह+ए', द्वित्व, अभ्यासकार्य भयो, 'जगृहे' सिद्ध भयो । लिट् आत्मनेपदका सबै रूप-

**ग्रह् लिट् पर.-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | जगृहे | जगृहाते | जगृहिरे |
| मध्यमपुरुष | जगृहिषे | जगृहाथे | जगृहिढ्वे/ध्वे |
| उत्तमपुरुष | जगृहे | जगृहिवहे | जगृहिमहे |

**ग्रह इति**- [९७]एक अच् हुने ग्रह धातुदेखि विधान गरिएका इट्का स्थानमा दीर्घ होस्, लिट्मा त नहोस् ।

**ग्रहीता**- लुट्मा 'ग्रहिता' भएपछि, "ग्रहोऽलिटि दीर्घः"ले इट् आगमका इकारका स्थानमा दीर्घ ईकार भयो, 'ग्रहीता' सिद्ध भयो ।

**ग्रहीष्यति, ग्रहीष्यते**- यहाँ पनि इट्का इकारका स्थानमा "ग्रहोऽलिटि०ले दीर्घ ईकार भयो, 'ग्रहीष्यति', 'ग्रहीष्यते' सिद्ध भयो । यसै गरी अरू रूप पनि हुन्छन् । **लोट्मा** विशेष प्रक्रिया छ ।

**हल इति**- हिका स्थानमा तातङ् नभएको पक्षमा "हलः श्नः०"ले श्ना प्रत्ययका स्थानमा शानच् आदेश हुन्छ ।

**गृहाण/गृह्णीतात्**- ग्रहलोट्, सिप्, हि, श्ना, संप्रसारण, पूर्वरूप भयो, 'गृह्+ना+हि' यहाँ "हलः श्नः०"ले नाका स्थानमा शानच् आदेश भयो, 'गृहान+हि' भयो, "अतो हेः"ले हि को लुक्, णत्व भयो, 'गृहाण' सिद्ध भयो । आशीर्वाद अर्थमा तातङ् भएको पक्षमा श्नाको "ई हल्यघोः"ले ईत्व भयो, 'गृह्णीतात्' सिद्ध भयो । यस्तै प्रकारले तस्मा र झिमा गृह्णीताम्, गृह्णन्तु यी रूप हुन्छन् ।

बाँकी रूप- गृहाण, गृह्णीतात्, गृह्णीतम्, गृह्णीत । गृह्णानि, गृह्णाव, गृह्णाम ।

**ग्रह् लोट् आ-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | गृह्णीताम् | गृह्णाताम् | गृह्णताम् |
| मध्यमपुरुष | गृह्णीष्व | गृह्णाथाम् | गृह्णीध्वम् |
| उत्तमपुरुष | गृह्णै | गृह्णावहै | गृह्णामहै |

**लङ्मा** अगृह्णात् । अगृह्णीत् आदि । **विधिलिङ्मा** गृह्णीयात् गृह्णीत आदि । **आशीर्लिङ्मा** परस्मैपदमा यासुट् कित् ङित् हुनाले "ग्रहिज्या०"ले संप्रसारण हुन्छ । गृह्यात्, गृह्यास्ताम्, गृह्यासुः आदि रूप हुन्छन् । **आत्मनेपदमा** विभक्तिमा रहेका तकार र थकारको सुट् आगम विभक्तिको सीयुट्आगम त्यसको इट् आगम हुन्छ । इट्आगमको "ग्रहोऽलिटि०"ले दीर्घ पनि हुन्छ ।

**आ.लि.आ-**

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्रथमपुरुष | ग्रहीषीष्ट | ग्रहीषीयास्ताम् | ग्रहीषीरन् |
| मध्यमपुरुष | ग्रहीषीष्ठाः | ग्रहीषीयास्थाम् | ग्रहीषीढ्वम्/ध्वम् |
| उत्तमपुरुष | ग्रहीषीय | ग्रहीषीवहि | ग्रहीषीमहि |

---

९७ 'एकाच इति हरदत्तानुरोधेनोक्तम् अग्रहीष्टामित्यादौ लावस्थायामेवाट्पक्षे एकाचो विहितत्वाभावादसङ्गतं भवति' इति तत्वबोधिनीटिप्पण्याम् ।

ह्म्यन्तेति न वृद्धिः । अग्रहीत् । अग्रहीष्टाम् । अग्रहीष्ट । अग्रहीषाताम् ॥ **कुष निष्कर्षे** ॥१८॥ कुष्णाति । कोषिता ॥ **अश** भोजने ॥१९॥ अश्नाति । आश । अशिता । अशिष्यति । अश्नातु । अशान ॥

---

**ह्म्यन्तेति**– लुङ् परस्मैदमा "ह्म्यन्तक्षण०"ले वृद्धिको निषेध हुन्छ ।

**अग्रहीत्**– लुङ्मा 'अग्रह्+इस्+ईत्' यहाँ "वदव्रज०"ले वृद्धिपायो "नेटि"ले निषेध भएपछि, "अतो हलादेः०"ले वृद्धि पाएकोमा "ह्म्यन्तक्षण०"ले निषेध भयो, इट्को "ग्रहोलिटि०"ले दीर्घ भयो, सकारको लोप, सर्वर्णदीर्घ भयो, 'अग्रहीत्' सिद्ध भयो ।

**अग्रहीष्टाम्**– 'अग्रह्+इस्+ताम्' यहाँ पनि पूर्ववत् वृद्धिनिषेध, इट् आगमको दीर्घ भयो, 'अग्रहीष्टाम्' सिद्ध भयो, लुङ्का रूप तल दिइन्छ ।

| **ग्रह लुङ् पर-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अग्रहीत् | अग्रहीष्टाम् | अग्रहीषुः |
| | मध्यमपुरुष | अग्रहीः | अग्रहीष्टम् | अग्रहीष्ट |
| | उत्तमपुरुष | अग्रहीषम् | अग्रहीष्व | अग्रहीष्म |
| **लुङ् आत्मनेपद-** | प्रथमपुरुष | अग्रहीष्ट | अग्रहीषाताम् | अग्रहीषत |
| | मध्यमपुरुष | अग्रहीष्ठाः | अग्रहीषाथाम् | अग्रहीढ्वम्/ध्वम् |
| | उत्तमपुरुष | अग्रहीषि | अग्रहीष्वहि | अग्रहीष्महि |

**लृङ्मा** अग्रहीष्यत्, अग्रहीष्यत आदि रूप हुन्छन्

**कुष** धातु निकाल्नु, निश्चय गर्नु अर्थमा छ । यो धातु परस्मैपदी हो । (सेट्, सकर्मक ) दिग्दर्शनको निमित्त लट्आदि कतिपय लकारका रूपहरू देखाइन्छ ।

कुष्णाति । चुकोष । कोषिता । कोषिष्यति । कुष्णातु । अकुष्णात् आदि ।

अश् धातु खानु अर्थमा छ । यो धातु परस्मैपदी हो । (सेट्, सकर्मक )

**अश्नाति**– अश् धातुदेखि लट्, तिप्, श्ना, 'अश्+ना+ति', यहाँ "स्तोः श्चुना श्चुः"ले चुत्व पाएकोमा "शात्"ले निषेध भयो, 'अश्नाति' सिद्ध भयो ।

| **अश् लट्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अश्नाति | अश्नीतः | अश्नन्ति |
| | मध्यमपुरुष | अश्नासि | अश्नीथः | अश्नीथ |
| | उत्तमपुरुष | अश्नामि | अश्नीवः | अश्नीमः |

**लिट्**– आश, आशतुः, आशुः आदि । **लुट्मा** अशिता आदि । **लृट्मा** अशिष्यति आदि रूप हुन्छन् ।

| **अश् लोट्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अश्नातु/अश्नीतात् | अश्नीताम् | अश्नन्तु |
| | मध्यमपुरुष | अशान/अश्नीतात् | अश्नीतम् | अश्नीत |
| | उत्तमपुरुष | अश्नानि | अश्नाव | अश्नाम |
| **अश् लङ्-** | प्रथमपुरुष | आश्नात् | आश्नीताम् | आश्नन् |
| | मध्यमपुरुष | आश्नाः | आश्नीतम् | आश्नीत |
| | उत्तमपुरुष | आश्नाम् | आश्नीव | आश्नीम |

**मुष** स्तेये ॥२०॥ मोषिता । मुषाण । **ज्ञा** अवबोधने ॥२१॥ जज्ञौ ॥

---

**विधिलिङ्मा** अश्नीयात्, अश्नीयाताम, अश्नीयु: आदि । **आशीर्लिङ्मा** अश्यात्, अश्यास्ताम्, अश्यासु: आदि । **लुङ्मा** आशीत्, आशिष्टाम्, आशिषु: आदि । **लृङ्मा** आशिष्यत्, आशिष्यताम्, आशिष्यन् आदि रूप हुन्छन् ।

**मुष** धातु चोर्नु अर्थमा छ । यो धातु परमैपदी हो । ( सेट्, सकर्मक )

**मुष्णाति**– 'मुष्+ना+ति', णत्व भयो, 'मुष्णाति' सिद्ध भयो ।

लिट् आदि लकारका कतिपय रूप- मुमोष । मोषिता । मोषिष्यति । मुष्णातु/मुष्णीतात् ।

**ज्ञा** धातु जान्नु अर्थमा छ । यो धातु परस्मैपदी हो । (अनिट्, सकर्मक )

**जानाति**– ज्ञा धातुदेखि लट्, तिप्, श्ना भयो, 'ज्ञा+ना+ति', "ज्ञाजननोर्जा"ले ज्ञाका स्थानमा जाआदेश भयो, 'जानाति' सिद्ध भयो ।

| **ज्ञा लट्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | जानाति | जानीत: | जानन्ति |
| | मध्यमपुरुष | जानासि | जानीथ: | जानीथ |
| | उत्तमपुरुष | जानामि | जानीव: | जानीम: |

**जज्ञौ**– लिट्मा 'ज्ञा+औ', 'ज्ञाज्ञा+औ', 'जज्ञा+औ', वृद्धि भयो, 'जज्ञौ' सिद्ध भयो । लिट्का सबै रूप-

| **ज्ञा लिट्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | जज्ञौ | जज्ञतु: | जज्ञु: |
| | मध्यमपुरुष | जज्ञिथ/जज्ञाथ | जज्ञथु: | जज्ञ |
| | उत्तमपुरुष | जज्ञौ | जज्ञिव | जज्ञिम |

**लुट्मा** ज्ञाता आदि । **लृट्मा** ज्ञास्यति आदि रूप हुन्छन् ।

| **ज्ञा लोट्-** | **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|---|
| | प्रथमपुरुष | जानातु/जानीतात् | जानीताम् | जानन्तु |
| | मध्यमपुरुष | जानीहि/जानीतात् | जानीतम् | जानीत |
| | उत्तमपुरुष | जानानि | जानाव | जानाम |
| **ज्ञा लङ्-** | प्रथमपुरुष | अजानात् | अजानीताम् | अजानन् |
| | मध्यमपुरुष | अजाना: | अजानीतम् | अजानीत |
| | उत्तमपुरुष | अजानाम् | अजानीव | अजानीम |
| **ज्ञा विलि-** | प्रथमपुरुष | जानीयात् | जानीयाताम् | जानीयु: |
| | मध्यमपुरुष | जानीया: | जानीयातम् | जानीयात |
| | उत्तमपुरुष | जानीयाम् | जानीयाव | जानीयाम |

आशीर्लिङ्मा "वान्यस्य संयोगादे:"ले वैकल्पिक एत्व हुन्छ । ज्ञेयात्, ज्ञेयास्ताम, ज्ञेयासु: आदि र ज्ञायात्, ज्ञायास्ताम, ज्ञायासु: आदि रूप हुन्छन् ।

**लुङ्मा**– "यमरमनमातां सक् च"ले सिच्को इट् आगम र धातुको सक् आगम हुन्छ । अज्ञासीत, अज्ञासिष्टाम्, अज्ञासिषु: आदि रूप हुन्छन । **लङ्मा**– अज्ञास्यत आदि रूप हुन्छन ।

**वृङ्** संभक्तौ ॥२२॥ वृणीते । ववृषे । ववृढ्वे । वरीता, वरिता । अवरीष्ट, अवरिष्ट, अवृत ॥

**इति क्र्यादयः ॥९॥**

---

यो धातु परस्मैदी मात्र हो भने "जानीते सुतरामसौ गुरूकुलक्लिष्टो मुरारिः कविः" "ते के न जानीमहे" आदि प्रयोग कसरी शुद्ध हुन्छन् ?

"अनुपसर्गाज्ज्ञः"ले क्रियाको फल कर्तामा गएमा उपसर्ग नलागेको ज्ञाधातुदेखि आत्मनेपद पनि हुन्छ ।

**आत्मनेपदमा** लट् आदि लकारमा जानीते । जज्ञे । ज्ञाता । ज्ञास्यते । जानीताम् । अजानीत । जानीत । ज्ञासीष्ट । अज्ञास्त । अज्ञास्यत आदि रूप हुन्छन् ।

**वृङ्**धातु सेवा गर्नु अर्थमा छ । यो धातु आत्मपदी हो । ( सेट्, सकर्मक )

**वृणीते**– वृ लट्, त, एत्व, 'वृना+ते' "ई इल्यघोः"ले नाका आकारका स्थानमा ईकार, वृनीते, णत्व भयो, 'वृणीते' सिद्ध भयो । श्नाप्रत्यय ङित् हुनाले वृका ऋकारको स्थानमा गुण भएन ।

**वृणाते**– 'वृ+ना+आते' भएपछि "श्नाभ्यस्तयोरातः"ले आकारको लोप, णत्व भयो, 'वृणाते' सिद्ध भयो ।

**वृणते**– वृ लट्, झ, अत् आदेश, एत्व, श्ना प्रत्यय, 'वृ+ना+अते' "श्नाभ्यस्तयोरातः"ले आकारलोप, 'वृनते', णत्व भयो, 'वृणते' सिद्ध भयो । सबै रूप तल दिइन्छ ।

| **वृ. लट्–** | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | वृणीते | वृणाते | वृणते |
| | मध्यमपुरुष | वृणीषे | वृणाथे | वृणीध्वे |
| | उत्तमपुरुष | वृणे | वृणीवहे | वृणीमहे |

लिट्मा "कृसृभृवृ०"ले इट् आगमको निषेध हुन्छ ।

| **वृ. लिट्–** | प्रथमपुरुष | वव्रे | वव्राते | वव्रिरे |
|---|---|---|---|---|
| | मध्यमपुरुष | ववृषे | वव्राथे | ववृढ्वे |
| | उत्तमपुरुष | वव्रे | ववृवहे | ववृमहे |

अब अरू सबै रूप वृञ् वरणेको आत्मनेपदमा जस्तै हुन्छन् । **लुट्मा** वरीता, वरिता आदि । **लृट्मा** वरीष्यते, वरिष्यते आदि । **लोट्मा** वृणीताम् आदि । **लङ्मा** अवृणीत आदि । **विधिलिङ्मा** वृणीत आदि । **आशीर्लिङ्मा** वरीषीष्ट, वरिषीष्ट आदि रूप हुन्छन् । **लुङ्मा** "लिङसिचोरात्मनेपदेषु"ले वैकल्पिक इट् हुन्छ । इट् भएको पक्षमा अवरीष्ट, अवरिष्ट आदि र इट् नभएको पक्षमा अवृत आदि रूप हुन्छन् । **लृङ्मा** अवरीष्यत, अवरिष्यत आदि रूप हुन्छन् ।

**क्र्यादिगण सकियो ।**

-------------

## अथ चुरादयः

चुर स्तेये ॥१॥

६९२. **सत्यापपाशरूपवीणातूलश्लोकसेनालोमत्वचवर्मवर्णचूर्णचुरादिभ्यो णिच् ३।१।२५॥**

एभ्यो णिच् स्यात्। चूर्णान्तेभ्यः 'प्रातिपदिकाद्धात्वर्थे' इत्येव सिद्धे तेषामिह ग्रहण प्रपञ्चार्थम्। चुरादिभ्यस्तु स्वार्थे। पुगन्तेति गुणः, सनाद्यन्ता इति धातुत्वम्। तिप्शबादि। गुणायादेशौ। चोरयति ॥

६९३. **णिचश्च १।३।७४॥**

णिजन्तादात्मनेपदं स्यात्कर्तृगामिनि क्रियाफले।

---

**अब चुरादिगण शुरू हुन्छ।**

**चुर** धातु चोर्नु अर्थमा छ। ण्यन्त धातु सबै उपभपदी हुन्छन्। (सेट् सकर्मक)

**सत्यापेति–** आपुक् आगम सहित सत्य, पाश, रूप, वीणा, तूल, श्लोक, सेना, लोमन्, त्वच्, वर्मन्, वर्ण, चूर्ण यी प्रातिपदिकदेखि र चुरादिगणपठित धातुदेखि णिच् प्रत्यय होस् स्वार्थमा।

सत्य शब्ददेखि चूर्ण शब्दसम्मका जो शब्द छन्, तिनीहरू देखि "प्रातिपदिकाद्धात्वर्थे वहु मिष्ठवच्च" यो वार्तिकले नै धातुका अर्थमा णिच् प्रत्यय सिद्ध छँदाछँदै तिनीहरूको यस सूत्रमा ग्रहण गर्नु प्रपञ्च (वेलीविस्तार अथवा सरलता) का निमित्त हो। 'सत्यं करोति', यस अर्थमा णिच्को विवक्षामा आपुक् आगम हुन्छ र कित्वात् अन्त्यतर्फ रहँदा सत्याप् शब्द बन्दछ उच्चारणको सरलताका निमित्त सूत्रमा सत्याप भनिएको हो। यस्तै 'अर्थं करोति' यस विग्रहमा अर्थशब्दको र 'वेदमाचष्टे' यस विग्रहमा वेद शब्दको पनि आपुक् आगम हुन्छ। यो विवरण सिद्धान्तकौमुदीमा नामधातु प्रक्रियामा गरेको छ। लघुकौमुदी छोटकरीमा बनाउँदा यस्ता विशेषविवरणात्मक कुरा छोडिएको छ। चुरादिगणपठित धातुदेखि स्वार्थमा नै णिच् हुन्छ।

"पुगन्तलघूपधस्य च"ले चुर् को उकारकास्थानमा गुण भएर ओकार हुन्छ। र चोरि धातु बन्छ। चोरि यसलाई "सनाद्यन्ता धातवः"ले धातुसंज्ञा हुन्छ, अनि तिप्, शप् आदि हुन्छन्। गुण र अय् आदेश भएपछि 'चोरयति' रूप सिद्ध हुन्छ।

**चोरयति–** चुर् धातुदेखि "सत्यापपाश०" यस सूत्रले णिच् प्रत्यय भयो, "हलन्त्यम्"ले चकारको "चुटू"ले णकारको इत्संज्ञा र लोप भयो, 'चुर+इ' भयो, इलाई पर राखेर चुर्लाई अङ्गसंज्ञा र चुको उकारलाई उपधासंज्ञा भयो, "पुगन्तलघूपधस्य च"ले उपधाको अकारका स्थान गुण भएर ओकार भयो, चोरि भयो, चोरि यसलाई "सनाद्यन्ता धातवः"ले धातुसंज्ञा भयो, वर्तमानकालमा चोरि धातुदेखि लट्लकार भयो, क्रियाको फल कर्तामा नगएमा "शेषात्कर्तरि०"ले परस्मैपद, "शेषे प्रथमः" "द्व्येकयोः०" यी दुवै सूत्र लाएर एकत्वसंख्याविशिष्ट रूप अर्थ बुझिँदामा प्रथमपुरुषको एकवचन तिप् आयो, शप् प्रत्यय भयो, 'चोरि+अ+ति', चोरिका इकारका स्थानमा गुण भयो, 'चोरे+अति' अय् आदेश भयो, 'चोरयति' सिद्ध भयो। यस्तै प्रकारले चोरयतः, चोरयन्ति आदि रूप बन्दछन्।

**णिचश्चेति–** णिजन्त धातुदेखि आत्मनेपद होस्। क्रियाको फल कर्तामा गएमा।

चोरयते । चोरयामास । चोरयिता । चोर्यात्, चोरयिषीष्ट । णिश्रीति चङ् । णौ चङीति ह्रस्वः । चङीति द्वित्वम् । हलादिः शेषः । दीर्घो लघोरित्यभ्यासस्य दीर्घः । अचूचुरत्,

---

**चोरयते**– पूर्ववत् णिच् भएर चोरि धातु बनेको छ । चोरि धातुदेखि क्रियाको फल कर्तामा गएमा "णिचश्च"ले आत्मनेपद, "शेषे प्रथमः" "द्व्येकयोः०" दुवै सूत्र लाएर एकत्वसंख्या विशिष्ट रूप अर्थ बुझिँदामा प्रथमपुरुष एकवचन त आयो शप् प्रत्यय भयो, 'चोरि+अ+त', तका अकारको एत्व भयो, गुण, अय् आदेश भयो, 'चोरयते' सिद्ध भयो । यस्तै प्रकारले चोरयते, चोरयन्ते आदि रूप हुन्छन् ।

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| **चुर् लट् पर.**- | प्रथमपुरुष | चोरयति | चोरयतः | चोरयन्ति |
| | मध्यमपुरुष | चोरयसि | चोरयथः | चोरयथ |
| | उत्तमपुरुष | चोरयामि | चोरयावः | चोरयामः |
| **चुर् लट् आ.**- | प्रथमपुरुष | चोरयते | चोरयेते | चोरयन्ते |
| | मध्यमपुरुष | चोरयसे | चोरयेथे | चोरयध्वे |
| | उत्तमपुरुष | चोरये | चोरयावहे | चोरयामहे |

**प्रयोग परस्मैपदमा**–

स चोरयति (त्यो चोर्छ) तौ चोरयतः (तीदुई चोर्छन्) ते चोरयन्ति (तिनीहरू चोर्छन्)

**प्रयोग आत्मनेपदमा**–

स चोरयते (त्यो चोर्छ) तौ चोरयेते (ती दुई चोर्छन्) ते चोरयन्ते (तिनीहरू चोर्छन्)

इत्यादि प्रयोग पूर्ववत् सर्वत्र अनुशीलन गर्नू ।

**लिट्मा** "कास्यनेकाच०"ले आम् प्रत्यय हुन्छ । गुण अय् आदेश भएर 'चोरयाम्+ल' हुन्छ । लिट्को लुक् हुन्छ । अनि लिट पर हुने कृ, भू र अस्धातुको अनुप्रयोग हुन्छ, कृ धातुदेखि उभयपद, भू र अस् धातुदेखि परस्मैपद हुन्छ । चोरयाञ्चकार, चोरयाञ्चक्रे । चोरयाम्बभूव । चोरयामास आदि रूप हुन्छन् । णिजन्त धातु सबै सेट् हुन्छन् । लुट्, लट् आदि लकारमा स्य प्रत्यय, तासि प्रत्यय, सिच् आदिको इट् आगम हुन्छ ।

**चोरयिता**– लुट्मा 'चोरि+इता' गुण, अय्आदेश भयो, 'चोरयिता' सिद्ध भयो । लृट् चोरयिष्यति, चोरयिष्यते आदि । **लोट्मा** चोरयतु/तात्, चोरयताम् आदि । **लङ्मा** अचोरयत्, अचोरयत आदि । **विधिलिङ्मा** चोरयेत्, चोरयेत आदि । **आशीर्लिङ्मा** चोर्यात्, चोरयिषीष्ट आदि रूप हुन्छन् ।

**णिश्रीत्यादि**– लुङ्मा "णिश्रिद्रुस्रुभ्यः०"ले चङ् हुन्छ । "णौ चङि०" ले उपधाको ह्रस्व "चङि"ले द्वित्व, हलादिशेष, "दीर्घो लघोः"ले अभ्यासको दीर्घ हुन्छ ।

**अचूचुरत्**– लुङ् परस्मैपदमा चोरि धातुदेखि लुङ लकार भयो, अट्आगम 'अचोरि+ल्' तिप्, च्लिप्रत्यय, "च्लेः सिच्"लाई बाधेर "णिश्रिद्रुस्रुभ्यः०"ले च्लिका स्थानमा चङ् भयो, 'अचोरि+अ+ति', "णौ चङ्युपधायाः"ले उपधाका स्थानमा हस्व भएर उकार भयो, 'अचुर्+इ+अति', "चङि"ले चुर्को द्वित्व, 'अचुर्+चुर्+अति', हलादिशेष "सन्वल्लघुनि०"ले सन्वद्भाव, "दीर्घो लघोः"ले अभ्यासको दीर्घ हुँदा, 'अचू+चुर्+इ+अत्' "णेरनिटि"ले णिको लोप भयो, 'अचूचुरत्' सिद्ध भयो ।

---

अचूचुरत ॥ **कथ** वाक्य प्रबन्धे ॥२॥ अल्लोपः ।

( सू. अं. ५६६ "अचः परस्मिन्पूर्वविधौ" १।१।५७। अल्विध्यर्थमिदम् । परनिमित्तोऽजादेशः स्थानिवत् स्यात्स्थानिभूतादचः पूर्वत्वेन दृष्टस्य विधौ कर्तव्ये ।) इति स्थानिवत्वान्नोपधावृद्धिः । कथयति । अग्लोपित्वाद्दीर्घसन्वद्भावौ न ।

---

**अचूचरत**– आत्मनेपदमा पनि पूर्ववत् सबै प्रक्रिया भएर रूप 'अचूचुरत' सिद्ध हुन्छ । अरू रूप पनि यसैगरी बन्दछन् ।

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| **चुर् लुङ् पर-** | प्रथमपुरुष | अचूचुरत् | अचूचुरताम् | अचूचुरन् |
| | मध्यमपुरुष | अचूचुरः | अचूचुरतम् | अचूचुरत |
| | उत्तमपुरुष | अचूचुरम् | अचूचुराव | अचूचुराम |
| **चुर् लुङ् आ-** | प्रथमपुरुष | अचूचुरत | अचूचुरेताम् | अचूचुरन्त |
| | मध्यमपुरुष | अचूचुरथाः | अचूचुरेथाम् | अचूचुरध्वम् |
| | उत्तमपुरुष | अचूचुरे | अचूचुरावहि | अचूचुरामहि |

**लृङ्मा**– अचोरयिष्यत्, अचोरयिष्यत आदि रूप हुन्छन् ।

**कथ** धातु कथा भन्नु, बोल्नु अर्थमा छ । यो अकारान्त धातु हो । णिच् भएपछि कथका आकारको लोप हुन्छ ।

**अच इति**– परलाई निमित्त मानेर भएको अच्का स्थानमा भएको आदेश स्थानिवृत्ति धर्मवान् होस्, स्थानिभूत अच्देखि पूर्वत्वले देखिएको विधि गर्नुछ भने ।

**इतीति**– यो सूत्रले लोपको स्थानिवद्भाव भएकोले उपधावृद्धि हुदैन ।

**कथयति**– कथ धातुदेखि "सत्यापपाश०"ले णिच् भयो, 'कथ+इ' भयो, "अतो लोपः"ले कथका अकारको लोप भयो, 'कथ्+इ' भयो, कथ्का अकारको "अत उपधायाः"ले वृद्धि पाएमा "अचः परस्मिन् पूर्वविधौ"ले पर णिलाई निमित्त मानेर भएको 'अ'का स्थानमा भएको लोपआदेश स्थानिभूत अच्देखि पूर्वको विधि- उपधावृद्धि गर्नुछ भन्दा स्थानिवद् भाव भएर अकार जस्तै भयो । तव, 'क'को अकार उपधामा रहेन र वृद्धि भएन, कथिधातु नै रहयो । तव कथि धातुदेखि लट्, तिप्, शप्, गुण, अय् आदेश भयो, 'कथयति' सिद्ध भयो । यस्तै प्रकारले कथयतः, कथयन्ति आदि रूप सिद्ध हुन्छन् ।

**कथयाञ्चकार**– पूर्ववत् स्थानिवद्भाव भएर कथि धातु भएकै छ, कथि धातुदेखि लिट्, आम्, गुण, अय्आदेश कथयाम् ल, लिट्को लुक्, लिट् परहुने कृधातुको अनुप्रयोग क्रियाको फल कर्तामा नगएमा पूर्ववत् परस्मैपद एकवचन तिप्, णल्, द्वित्वादि भयो, 'कथयाञ्चकार' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप सिद्ध गर्नू । क्रियाको फल कर्तामा गएमा आत्मनेपदमा पूर्ववत् कथयाञ्चक्रे इत्यादि रूप हुन्छन् । भू धातु र अस् धातुको अनुप्रयोगमा कथयाम्बभूव । कथयामास आदि रूप हुन्छन ।

**लुट्मा** कथयिता आदि । **लृट्मा** कथयिष्यति/ते आदि । **लोट्मा** कथयतु/ताम् आदि । **लङ्मा** अकथयत्/त आदि । **विधिलिङ्मा** कथयेत्/त, आदि । आशीर्लिङ्मा कथ्यात्, कथयिषीष्ट आदि रूप हुन्छन् ।

**अग्लोपित्वादिति**– कथि यो अग्लोपि धातु हुनाले दीर्घ र सन्वद्भाव हुँदैनन्, "अतः सन्यतः"ले इत्व पनि हुँदैन ।

---

अचकथत् ॥ **गण** संख्याने ॥३॥ गणयति ॥

**६९४. ई च गणः ७।४।९७।**

गणयतेरभ्यासस्य ई स्याच्चङ्परे णौ चादत् । अजीगणत्, अजगणत् ॥

**इति चुरादयः ॥१०॥**

---

**अचकथत्**– कथ धातुदेखि लुङ् अट् आगम तिप्, च्लि भएपछि च्लिका स्थानमा चङ् भएर "चङि"ले द्वित्व, अभ्यासकार्य, भएपछि, 'अचकथि+अ+त्', यहाँ "सन्वल्लघुनि०"ले "अनग्लोपे" भन्छ यहाँ अग्लोप भएको छ र सन्वद्भाव भएन, सन्वद्भाव नभएपछि अभ्यासको इत्व, दीर्घ, केही भएन । अचकथिका इकारको "णेरनिटि"ले लोप भयो, 'अचकथत्' सिद्ध भयो । यस्तै प्रकारले अचकथताम् आदि रूप हुन्छन् । आत्मनेपदमा अचकथत आदि रूप हुन्छन् ।

**गण** धातु गिन्ती गर्नु अर्थमा छ । यो पनि अदन्त धातु हो ।

**गणयति**– गण धातुदेखि "सत्यापपाश०"ले णिच् भयो, उपधावृद्धि पाएकोमा "अचः परस्मिन्०"ले लोपको स्थानिवद्भाव भयो र वृद्धि भएन गणि धातु नै रह्यो ।

**गणि** धातुदेखि लट्, तिप्, शप्, गुण, अय् आदेश भयो, 'गणयति' सिद्ध भयो ।

**गणयांञ्चकार**– गणिधातुदेखि लिट्, आम् लिट्को लुक् पूर्ववत् कृको अनुप्रयोग द्वित्वादि भयो, 'गणयांञ्चकार' सिद्ध भयो । अनुप्रयुक्त कृ धातुदेखि आत्मनेपद भएमा गणयाञ्चक्रे आदि रूप हुन्छन् । भू धातुको अनुप्रयोगमा गणयांबभूव आदि र अस् धातुको अनुप्रयोगमा गणयामास आदि रूप पूर्ववत् सिद्ध हुन्छन् । अरू लकारमा पनि पूर्ववत् कथि धातुमा जस्तै ऊह गर्नू । लुङ्मा विशेष प्रक्रिया छ ।

**ई चेति**– गणि धातुका अभ्यासका स्थानमा दीर्घ होस्, चकार पढनाले अकार पनि होस्, चङ् पर हुने णि पर भएमा ।

**अजीगणत्/अजगणत्**– गणि धातुदेखि लुङ्लकार, अट् आगम भएपछि पूर्ववत् प्रक्रिया भएर 'अजगणि+अत्' भयो, अग्लोपित्वात् सन्वद्भाव भएन अनि "ईच गण०"ले अभ्यासका अकारका स्थानमा दीर्घ ईकार भयो, 'अजीगणि+अत्' भयो । चकार पढ्नाले अभ्यासमा अकार पनि होस् भनेकोले एक पक्षमा अकार भयो, 'अजगणि+अत्' भयो, दुवै पक्षमा "णेरनिटि"ले णिको लोप् भयो, 'अजीगणत्', 'अजगणत्' दुवै रूप सिद्ध भए । आत्मनेपदमा अजीगणत, अजगणत यी दुई रूप पूर्ववत् सिद्ध हुन्छन् । आत्मनेपद र परस्मैपदमा अरू रूप पनि यसैगरी सिद्ध हुन्छन् ।

**लृङ्मा** अगणयिष्यत्, अगणयिष्यत आदि रूप हुन्छन् ।

**चुरादिगण समाप्त भयो।**

---------------

## अथ ण्यन्तप्रक्रिया

**६९५. स्वतन्त्रः कर्ता १।४।५४॥**

क्रियायां स्वातन्त्र्येण विवक्षितोऽर्थः कर्ता स्यात् ॥

**६९६. तत्प्रयोजको हेतुश्च १।४।५५॥**

कर्तुः प्रयोजको हेतुसंज्ञः कर्तृसंज्ञश्च स्यात् ॥

**६९७. हेतुमति च ३।१।२६॥**

प्रयोजकव्यापारे प्रेषणादौ वाच्ये धातोर्णिच् स्यात् । भवन्तं प्रेरयति भावयति ॥

---

**अब ण्यन्तप्रक्रिया शुरू हुन्छ ।**

**स्वतन्त्र इति-** क्रियामा स्वतन्त्रताले विवक्षा गरिएको अर्थ कर्तृसंज्ञक होस् ।

'विर्वक्षाधीनं कारकम' यो सिद्धान्त अनुसार कर्ता विभिन्न हुन्छन् ।

'देवदत्तः पचति' (देवदत्तले पकाउँछ।) यहाँ कर्ता नै कर्ता छ ।

'अग्निःपचति' (आगोले पकाउँछ ।) यहाँ आगो करण हो तर कर्ता भएको छ ।

'स्थाली पचति' (कसौंडीले पकाउँछ) यहाँ स्थाली अधिकरण हो तर कर्ता बनेको छ ।

यसैले स्वतन्त्रताले विवक्षा गरिएको अर्थ कर्ता हुन्छ भनेको हो ।

**तत्प्रयोजक इति-** कर्ताको प्रयोजक हेतुसंज्ञक र कर्तृसंज्ञक होस् ।

कोही केही काम गर्न लागेको छ, उसलाई जसले त्यो काम गर्न लगाउँछ, त्यो त्यस कार्यको हेतु पनि हुन्छ र प्रयोजककर्ता पनि हुन्छ । जस्तै 'खादन्तं देवदत्तं यज्ञदत्तः प्रेरयति' (खान लागेको देवदत्तलाई यज्ञदत्तले प्रेरणा गर्छ, अर्थात् खा खा भन्छ) यहाँ यज्ञदत्त खाने क्रियाको हेतु हुन्छ र कर्ता पनि हुन्छ । यहाँ स्वतन्त्र कर्ता, प्रयोज्य र प्रेरणा दिने कर्ता प्रयोजक हुन्छ ।

**हेतुमतीति-** प्रयोजक कर्ताको व्यापार प्रेरणा आदि वाच्य छ भने (जुनसुकै) धातुदेखि पनि णिच्प्रत्यय होस् ।

**भवन्तं प्रेरयति-** (हुन लागेकालाई प्रेरणा गर्छ) यस वाक्यमा स्पष्ट दुई कर्ता छन् । हुन लागेको कर्ता एक, प्रेरणा दिने कर्ता अर्को ।

**भवन्तमिति-**अत यस वाक्यलाई यसरी स्पष्ट गरिन्छ- भवन्तं देवदत्तं यज्ञदत्तः प्रेरयति । (हुन लागेका देवदत्तलाई यज्ञदेत्तले प्रेरणा गर्छ) यस अर्थमा 'भावयति' यस्तो रूप हुन्छ ।

**भावयति-** भवन्तं देवदत्तं यज्ञदत्तः प्रेरयति यहाँ "स्वतन्त्रः कर्ता"ले देवदत्तलाई कर्तृसंज्ञा भयो, कर्ताको प्रयोजक यज्ञदत्तलाई "तत्प्रयोजको हेतुश्च"ले हेतुसंज्ञा र कर्तृसंज्ञा भयो, "हेतुमति च"ले प्रयोजककर्ता यज्ञदत्तको प्रेरणा व्यापार बुझिदामा भू धातुदेखि णिच् भयो, 'भू+इ' भयो, "अचो ञ्णिति"ले वृद्धि आव् आदेश भयो, 'भावि' भयो । भावि यसलाई "सनाद्यन्ताः०"ले धातुसंज्ञा भयो, भावि धातुदेखि लट् क्रियाको फल कर्तामा नजाँदा "शेषात्कर्तरि०"ले परस्मैपद तिप्, शप्, गुण अय् आदेश भयो, 'भावयति' सिद्ध भयो । क्रियाको फल कर्तामा जाँदा "णिचश्च"ले आत्मनेपद त, एत्व, शप् प्रत्यय आदि भयो, 'भावयते' सिद्ध भयो ।

---

**६९८. ओः पुयण्ज्यपरे ७।४।८०॥**

सनि परे यदङ्गं तदवयवाभ्यासोकारस्य इत्स्यात् पवर्गयण्जकारेष्ववर्णपरेषु परतः अबीभवत् ॥ ष्ठा गतिनिवृत्तौ ॥

**६९९. अर्तिह्रीब्लीरीक्नूयीक्ष्माय्यातां पुङ् णौ ७।३।३६॥**

स्थापयति ॥

---

**लिट्मा**- भवन्तं देवदत्तं यज्ञदत्तः प्रेरयाञ्चकार (हुन लागेको देवदत्तलाई यज्ञदत्तले प्रेरणा गऱ्यो) यस अर्थमा णिच् हुन्छ ।

भावयाञ्चकार । भावयाञ्चक्रे । भावयाम्बभूव । भावयामास । इत्यादि रूप हुन्छन् ।

यस्तै अरू लकारका रूप पनि ऊह गर्नू । लुङ् लकारमा विशेष प्रक्रिया छ ।

**ओः पुयणिति**– सन् पर भएमा जो अङ्ग छ, त्यसको अवयव अभ्यासका उकारका स्थानमा ह्रस्व इकार होस्, अवर्ण पर हुने पवर्ग, यण् र जकार पर भएमा ।

**अबीभवत्**– लुङ्को विवक्षामा 'भवन्तं देवदत्तं यज्ञदत्तः प्रैरिरत्' (हुन लागेको देवत्तलाई यज्ञदत्तले प्रेरणा गऱ्यो) यस अर्थमा "हेतुमति च"ले णिच् भयो, 'भू+इ' यहाँ "अचोञ्णिति"ले वृद्धि पाएकोमा "णिच्यच आदेशो न द्वित्वे कर्तव्ये"यो परिभाषा लाएर यहाँ लुङ्मा पछि द्वित्व गर्नु छ र अच्का स्थानमा हुने आदेश वृद्धि भएन, 'भू+इ' यस्तै रह्यो । 'भू+इ'लाई धातुसंज्ञा भयो, लुङ्लकार, अट्आगम, 'अभू+इ+ल्' भयो, लकारका स्थानमा परस्मैपद प्रथमपुरुष एकवचन ति, च्लिप्रत्यय भयो, च्लिका स्थानमा चङ्, 'अभू+ई+अ+ति' तिका इकारको "इतश्च"ले लोप "चङि"ले द्वित्व, हलादिशेष, ह्रस्व जश्त्व भएर 'अबू+भू+इ+अत्' भयो, अब अभ्यासको पछिल्लो खण्ड भूको उकारका स्थानमा वृद्धि, आव्आदेश भयो, 'अबु+भाव्+इ+अत्' यहाँ "णौ चङ्युपधाया ह्रस्वः"ले ह्रस्व भयो, सन्वद्भाव भयो । 'अबु+भव्+इ+अत्', यहाँ "ओः पुयण्ज्यपरे"ले अभ्यासका उकारका स्थानमा इकार भयो, "दीर्घो लघोः"ले अभ्यासका इकारका स्थानका दीर्घ भएर ईकार भयो, 'अबीभव्+इ+अत्' "णेरनिटि"ले णिको लोप भयो, 'अबीभवत्' सिद्ध भयो । यस्तै प्रकारले आत्मनेपदमा 'अबीभवत' सिद्ध हुन्छ । लृङ्मा अभावयिष्यत्, अभावयिष्यत आदि रूप हुन्छन् ।

**ष्ठा** धातु खडा हुनु अर्थमा छ । यो षोपदेश धातु हो । "धात्वादेः षः सः"ले सत्व हुन्छ र स्थाधातु बन्छ । (अनिट् अर्कमक) सार्वधातुक लकारमा "पाघ्राध्मा०"ले तिष्ठआदेश हुन्छ र तिष्ठति, तिष्ठतु अतिष्ठत् आदि रूप हुन्छन् । यो भ्वादिगणीय धातु हो ।

**अर्तीति**– ऋ धातु, ह्री धातु, ब्ली धातु, री धातु, क्नूयी धातु, क्ष्मायी धातु र आकारान्त धातुको पुक् आगम होस्, णि पर भएमा ।

**स्थापयति**– तिष्ठन्तं देवदत्तं यज्ञदत्तः प्रेरयति (खडा रहेको देवदत्तलाई यज्ञदत्तले प्रेरणा गर्छ) भन्दा देवदत्तलाई कर्तृसंज्ञा भयो । यज्ञदत्तलाई हेतुसंज्ञा र कर्तृसंज्ञा भयो ।

**स्था** धातुदेखि प्रयोजकको व्यापार प्रेरणा बुझिएकोले "हेतुमति च"ले णिच् प्रत्यय भयो, 'स्था+इ' भयो, अनि "अर्तिह्रीब्लीरी०"ले स्थाको पुक्आगम भयो, उक्को इत्संज्ञा लोप भयो, कित्वात् स्थाको आखिरी तर्फ 'प्' भयो, 'स्थापि' भयो, स्थापिधातुदेखि लट्, तिप्, शप्, गुण, अय् आदेश भयो, 'स्थापयति', सिद्ध भयो । यस्तै प्रकारले आत्मनेपदमा 'स्थापयते' सिद्ध भयो । स्थापयाञ्चकार आदि रूप पूर्ववत् ऊह गर्नू । लुङ्मा विशेष प्रक्रिया छ ।

---

**७००. तिष्ठतेरित् ७।४।५।।**

उपधाया इदादेशः स्याच्चङ्परे णौ । अतिष्ठिपत् ॥ **घट** चेष्टायाम् ॥

**७०१. मितां ह्रस्वः ६।४।९२।।**

घटादीनां ज्ञपादीनां चोपधाया ह्रस्वः स्याण्णौ । घटयति ॥ **ज्ञप** ज्ञाने ज्ञापने च ॥ ज्ञपयति । अजिज्ञपत् ॥

**इति ण्यन्तप्रक्रिया ॥**

---

**तिष्ठतेरिति**– स्था धातुका उपधाका स्थानमा ह्रस्व इकार आदेश होस्, चङ् पर हुने णि पर भएमा ।

**अतिष्ठिपत्**– तिष्ठन्तं देवदत्तं यज्ञदत्तः प्रैरिरत् (खडा रहेको देवदत्तलाई यज्ञदत्तले प्रेरणा गऱ्यो) भन्दा स्था धातुदेखि णिच्, पुक् आगम भएपछि स्थापि धातु भयो, स्थापि धातुदेखि लुङ्, अट्, लट्, तिबादि, 'अस्थाप्+इ+अत्' भएपछि स्था धातुको उपधा स्थाप्का आकारका स्थानमा "तिष्ठतेरित्"ले इकार आदेश भयो, 'अस्थिप्+इ+अत्' भयो, द्वित्व भयो, "शपूर्वाः खयः"ले अभ्यासका सकारको लोप भयो, 'अथि+स्थिप्+इ+अत्' भयो, "अभ्यासे चर्च"ले अकारको चर्त्व भएर तकार भयो, 'अति+स्थिप्+इ+अत्' भयो, "णेरिनिटि"ले णिलोप भयो, 'अतिस्थिप्+अत्' षत्व, ष्टुत्व, वर्णमेलन भयो, 'अतिष्ठिपत्' सिद्ध भयो ।

यस्तै प्रकारले आत्मनेपदमा 'अतिष्ठिपत' सिद्ध हुन्छ । **लृङ्मा** अस्थापयिष्यत्, अस्थापयिष्यत आदि रूप हुन्छन् ।

**घट** धातु चेष्टा गर्नु अर्थमा छ ।(सेट् अकर्मक)

**मितामिति**– घटादि धातु र ज्ञपादि धातुका उपधाका स्थानमा ह्रस्व होस् णि पर भएमा । मित् धातुको परिगणन सिद्धान्त कौमुदीमा छ । घटादि र ज्ञपादि धेरै धातु छन् ।

**घट** धातु आत्मनेपदी धातु हो । आत्मनेपदी धातुदेखि शतृ हुने ठाउँमा शानच् हुन्छ । घटमानं प्रेरयति- (चेष्टा गरिरहेकोलाई प्रेरणा गर्छ) भन्दा घट् धातुदेखि "हेतुमति च"ले णिच् उपधावृद्धि भएर 'घाटि' भयो, "मितां ह्रस्वः"ले उपधा आकारका स्थानमा ह्रस्व हुँदा अकार भयो, 'घटि' धातु भयो ।

**घटयति**– घटि धातुदेखि लट्, तिप्, शप् आदि भयो, 'घटयति' सिद्ध भयो । यस्तै प्रकारले घटयते आदि रूप जान्नू ।

**अजीघटत्**– घटमानं प्रैरिरत् (चेष्टा गरिरहेकोलाई प्रेरणा गऱ्यो) भन्दा पूर्ववत् घटिधातु धातुदेखि लुङ्लकार, तिबादि भएर 'अघट्+इ+अत्', यहाँ द्वित्व, अभ्यासकार्य, 'अज+घट्+इ+अत्' भयो, सन्वद्भाव, अभ्यासका अकारका स्थानमा इकार "दीर्घो लघोः"ले दीर्घ, णिलोप भयो, 'अजीघटत्' सिद्ध भयो ।

**ज्ञप** धातु जान्नु र जनाउनु अर्थमा छ । ज्ञप् धातु चुरादि हुनाले, ज्ञप् धातुदेखि पहिले स्वार्थमा णिच् भयो, (सेट् अर्थवशात् सकर्मक अकर्मक दुवै ) ज्ञपयन्तं प्रेरयति (जान्न लागेकोलाई प्रेरणा गर्छ) यस अर्थमा प्रेरणार्थक णिच् भयो, 'ज्ञप्+इ+इ' यहाँ पूर्व णिको "णेरनिटि"ले लोप भयो, 'अनि+ज्ञप्+इ', यहाँ "अत उपधायाः"ले वृद्धि भयो, 'ज्ञाप्+इ' भयो, ज्ञाका आकारको "मितां ह्रस्वः"ले ह्रस्व भयो, ज्ञपि धातु भयो ।

**ज्ञपयति**– ज्ञपि धातुदेखि लट्, तिप्, शप् आदि भयो, 'ज्ञपयति' सिद्ध भयो । यस्तै प्रकारले ज्ञपयते आदि रूप पनि सिद्ध गर्नू ।

**अजिज्ञपत्**– पूर्ववत् सिद्ध ज्ञपि धातुदेखि लुङ्लकार, अट् आगम, तिप्, च्लि, चङ्, द्वित्व,

## अथ सन्नन्तप्रक्रिया

**७०२. धातोः कर्मणः समानकर्तृकादिच्छायां वा ३।१।७।**

इषिकर्मण इषिणैककर्तृकाद्धातोः सन्प्रत्ययो वा स्यादिच्छायाम् ॥ पठ व्यक्तायां वाचि ॥

**७०३. सन्यङोः ६।१।९।।**

सन्नन्तस्य यङन्तस्य च धातोरनभ्यासस्य प्रथमस्यैकाचोद्वे स्तोऽजादेस्तु द्वितीयस्य । सन्यतः । पठितुमिच्छति पिपठिषति ।

---

अभ्यासकार्य भयो, 'अजज्ञप्+इ+अत्', यहाँ "सन्वल्लघुनि०"ले सन्वद्भाव भएपछि, "सन्यतः"ले अभ्यासका अकारका स्थानमा इकार भयो, 'अजिज्ञप्+इ+अत्' भयो, अभ्यास [९८] गुरू हुनाले "दीर्घो लघोः" लागेन, णिलोप भयो, 'अजिज्ञपत्' सिद्ध भयो । यहाँ स्वार्थ णिको प्रेरणार्थक णिलाई निमित्त मानेर लोप भएको छ । यहाँ णिनिमित्तक अक्को लोप भएकोले कसरी सन्वद्भाव भयो त ? यो शङ्का उत्पन्न हुन्छ, त्यसको समाधान यो हो । 'णावग्लोपेऽसति' यस वाक्यको अर्थ- 'णित्वजातौ परे अग्लोपे असति' (णित्व जाति अर्थात् दुवै णिलाई पर राखेर यता अक्को लोप नभएको) यस्तो हो । यहाँ दुवै णिलाई पर राखेर अगाडि अक्को लोप भएको छैन, अतः सन्वद्भाव हुन्छ[९९] ।

**ण्यन्त प्रकरण सकियो ।**

-------------

**अब सन्नत शुरू हुन्छ ।**

**धातोरिति**- इष् धातुको कर्मीभूत व्यापार बोधक इष् धातुका कर्ताले तुल्यकर्ता भएका धातुदेखि सन् प्रत्यय विकल्पले होस् इच्छा अर्थ बुझिँदामा ।

**पठ** धातु स्पष्ट बोली बोल्नु अर्थमा छ । अन्तिम अकारको इत्संज्ञा लोप हुन्छ ।(सेट् सकर्मक)

**सन्यङोरिति**- सन्नन्त र यङन्त धातुका प्रथम एकाच्को द्वित्व होस्, अजादि धातु छ भने दोस्रो एकाच्को द्वित्व होस् ।

**पिपठिषति**- पठितुम् इच्छति (पढ्न इच्छा गर्छ) यो विग्रहमा पठ् धातु, इष् धातुको कर्मीभूत व्यापारबोधक छ र इष् धातुको कर्ताले तुल्यकर्ता भएको पनि छ, र अर्थात् इच्छा गर्ने र पढ्ने व्यक्ति यौटै हो, त्यस्ता धातुदेखि सन् प्रत्यय होस् इच्छा अर्थ बुझिँदामा भनेकोले इच्छा अर्थ पनि बुझिन्छ र पठ् धातुदेखि सन् प्रत्यय भयो, 'पठ्+स' भयो, सलाई आर्धधातुकसंज्ञा भयो,

---

९८ ज्ञ यो संयुक्त वर्ण छ, अतः अजिज्ञप् यहाँ अभ्यास लघु भएन ।

९९ यस्तै अरू चुरादिका स्वार्थ णिजन्तधातुदेखि पनि प्रेरणार्थक णिच् गर्दा 'चोरयति' आदि रूप जस्ताको तस्तै हुन्छन् ।

कर्मणः किम् ? गमनेनेच्छति । समानकर्तृकात् किम् ? शिष्याः पठन्त्वितीच्छति गुरुः । वा ग्रहणाद्वाक्यमपि ॥ "लुङ्सनोर्घस्लृ" ॥

**७०४. सः स्यार्धधातुके ७।४।४९॥**

सस्य तः स्यात्तादावार्धधातुके । अत्तुमिच्छति जिघत्सति । एकाच इति नेट् ॥

---

"आर्धधातुकस्येड्वलादेः"ले इट्आगम भयो, 'पठ्+इस' भयो, "सन्यङोः"ले प्रथमएकाच् पठ्को द्वित्व, अभ्यासकार्य भयो, 'पपठ्+इस', "सन्यतः"ले अभ्यासका अकारका स्थानमा इकार भयो, 'पिपठिस', षत्व भयो, 'पिपठिष' भयो, "सनाद्यन्ताः०"ले 'पिपठिष'लाई धातुसंज्ञा भयो । पिपठिष धातुदेखि लट्लकार, "पूर्ववत्सनः" यो सूत्र लाएर पठ्धातु पहिले परस्मैपद हुनाले परस्मैपद तिप् भयो शप् भयो, 'पिपठिष+अति', "अतो गुणे"ले पररूप भयो, 'पिपठिषति' सिद्ध भयो ।

**विशेष-** "पूर्ववत्सनः" यो सूत्र लाएर सन्को प्रकृति धातु परस्मैपदी भए सन्नन्तदेखि परस्मैपद र आत्मनेपदी भए सन्नन्तदेखि आत्मनेपद हुन्छ । सन्नन्त धातु अनेकाच् बन्दछ "एकाच उपदेशे०" लाग्दैन । सबै धातु सेट् बन्दछन् । यहाँ सबै धातु अनेकाच् हुने हुनाले हलादि भएमा प्रथम एकाच् समुदायको र अजादि भएमा द्वितीय एकाच् समुदायको द्वित्व हुन्छ । सन्नन्तमा सबै धातु अनेकाच् हुने हुनाले लिट्मा आम् हुन्छ । 'पिपठिष+आम्' यहाँ पिपठिषका अकारको आम् पर भएमा "अतो लोपः"ले लोप हुन्छ र 'पिपठिषाम्' हुन्छ । पिपठिषाम् देखि कृ, भू, अस्को अनुप्रयोग हुन्छ । यहाँ पिपठिष धातुका (सन्नत पठ् धातुका) लिट् आदि लकारका एक एक रूप तल दिइन्छ ।

**पिपठिषाञ्चकार** । पिपठिषाम्बभूव । पिपठिषामास । लिट्मा 'पिपठिष+आम्' "अतो लोपः"ले अकारको लोप स्थानिवद्भाव भएर लघूपध, गुणको निषेध हुन्छ । यस्तै लुट् लकारमा 'पिपठिषिता'मा पनि जान्नू ।

**लुट्मा** पिपठिषिता आदि । **लृट्मा** पिपठिषिष्यति आदि । **लोट्मा** पिपठिषतु आदि । **लङ्मा** अपिपठिषत् आदि । **विधिलिङ्मा** पिपठिषेत् आदि । **आशीर्लिङ्मा** पिपठिष्यात् आदि । **लुङ्मा** अपिपठिषीत् आदि । **लृङ्मा** अपिपठिषिष्यत् आदि रूप हुन्छन् ।

**कर्मणः किमिति–** इष धातुको कर्मीभूतव्यापारबोधक धातु किन भन्नु ? नभन्ने हो भने गमनेन इच्छति (जानाले इच्छा गर्छ), यस विग्रहमा गम् धातु, इष् धातुको कर्मीभूतव्यापारवोधक छैन, करणीभूतव्यापारबोधक धातु छ, यहाँ सन् प्रत्यय हुँदैन ।

**समानकर्तृकादिति किम्–** इष् धातुका कर्ताले तुल्य कर्ता भएको धातु किन भन्नु ? नभन्ने हो भने 'शिष्याः पठन्त्वितीच्छति गुरुः' (शिष्यहरूले पढून् भनेर गुरु इच्छा गर्छन्) यहाँ पठ्धातुका कर्ता शिष्य र इष् धातुका कर्ता गुरू छन् । अतः पठ् धातुदेखि सन् प्रत्यय भएन ।

**वेति–** सन् प्रत्यय गर्ने सूत्रमा वा भएकोले एक पक्षमा वाक्य पनि हुन्छ । अर्थात 'पठितुम् इच्छति' यस्तो वाक्य पनि रहन्छ । 'पिपठिषति'को ठाउँमा 'पठितुम् इच्छति' यो वाक्य पनि प्रयोग गर्न सकिन्छ ।

**लुङ्सनोरिति–** अद् धातुका स्थानमा सन् प्रत्यय पर भएमा "लुङ्सनोर्घस्लृ" यस सूत्रले घस्लृ आदेश हुन्छ ।

**सस्येति–** सकारका स्थानमा तकार होस् सकार आदिमा हुने आर्धधातुकसंज्ञक प्रत्यय पर भएमा । "एकाच उपदेशे०"ले इट् आगमको निषेध हुन्छ ।

**जिघत्सति-** अत्तुमिच्छति (खान इच्छा गर्छ) यस अर्थमा "धातोः कर्मणः०"ले सन् प्रत्यय भयो, "लुङ्सनोः०"ले घस्लृ आदेश भयो, लृकारको इत्संज्ञा लोप भयो, 'घस्+स' भयो, सन्को "आर्धधातुकस्येड्वलादेः"ले इट् आगम पायो, त्यसको "एकाच उपदेशे०"ले निषेध भयो, द्वित्व

**७०५. अज्झनगमां सनि ६।४।१६॥**

अजन्तानां हन्तेरजादेशगमेश्च दीर्घो हलादौ सनि ॥

**७०६. इको झल् १।२।९॥**

इगन्ताज्झलादिः सन् कित् स्यात् । "ऋृत इद्धातोः" । कर्तुमिच्छति चिकीर्षति ॥

**७०७. सनि ग्रहगुहोश्च ७।२।१२**

ग्रहेर्गुहेरुगन्ताच्च सन इण् न स्यात् । बुभूषति ॥

**इति सन्नन्तप्रक्रिया ॥**

---

भयो, 'घस्+घस्+स', हलादिशेष, 'घ+घस्+स', चुत्व, 'झ+घस्+स', "सन्यतः"ले इत्व, 'जिघस्+स', भएपछि "सः स्यार्धधातुके"ले जिघस्का सकारका स्थानमा तकार भयो, 'जिघत्स' भयो । जिघत्स यसलाई "सनाद्यन्ताः०"ले धातुसंज्ञा भयो ।

जिघत्स धातुदेखि लट्लकार परस्मैपद प्रथमपुरुष एकवचन तिप्, शप्, "अतो गुणे"ले पर रूप भयो, 'जिघत्सति' सिद्ध भयो ।

**लिट्मा** जिघत्साञ्चकार । जिघत्साम्बभूव । जिघत्सामास आदि । **लुट्मा** जिघत्सिता आदि । **लृट्मा** जिघत्सिष्यति आदि । **लोट्मा** जिघत्सतु आदि । **लुङ्मा** अजिघत्सीत् आदि । **लृङ्मा** अजिघत्सिष्यत् आदि रूप हुन्छन् ।

**अज्झनेति**– अजन्त धातुका स्थानमा र हन् धातुका स्थानमा, अच्का स्थानमा आदेश हुने गम् धातुका स्थानमा पनि दीर्घ होस् झल् आदिमा हुने सन् पर भएमा ।

**इक इति**– इगन्त धातुदेखि पर रहेको झल् आदिमा हुने सन् कित् होस् । "ऋृत इद्धातोः०"ले इर्आदेश हुन्छ ।

**चिकीर्षति**– कर्तुमिच्छति (गर्न इच्छा गर्छ) यस अर्थमा कृ धातुदेखि सन् प्रत्यय भयो, इट् आगम पाएको "एकाच उपदेशे०"ले निषेध, द्वित्व भयो, 'कृ+कृ+स', "उरत्"ले अभ्यासका ऋकारका स्थानमा अर् 'कर्+कृ+स' हलादिशेष, चुत्व, 'चकृ+स', "सन्यतः"ले अभ्यासको इत्व, 'चिकृ+स' भयो, "अज्झनगमां०"ले अजन्त धातु हुनाले कृका ऋकारको दीर्घ ॠकार भयो, 'चिकॄ+स' भयो, "इको झल्"ले सन् प्रत्यय कित् भयो र गुणनिषेध भएपछि, "ऋृत इद्धातोः"ले ॠकारका स्थानमा इर् भयो, उपधाको "हलि च"ले दीर्घ, षत्व भयो, 'चिकीर्ष'धातु **बन्यो** । चिकीर्ष धातुदेखि लट्, तिप्, शप् भयो, पररूप भयो, 'चिकीर्षति' सिद्ध भयो ।

लिट् आदि लकारमा चिकीर्षाञ्चकार । चिकीर्षिता । चिकीर्षिष्यति आदि रूप जान्नू । **सनीतिः**– ग्रह धातु, गुह धातु र उक् अन्तमा हुने धातुदेखि पर रहेको सन् प्रत्ययको इट् आगम नहोस् ।

**बुभूषति**– भवितुम् इच्छति (हुन इच्छा गर्छ) यस अर्थमा भू धातुदेखि सन् भयो, 'भू+स' भयो, सन् प्रत्ययको "आर्धधातुकस्येड्वलादेः"ले इट् आगम पाएकोमा "सनि ग्रह०"ले निषेध भयो, "इको झल्"ले सन् कित् भयो र "क्ङिति च"ले गुणनिषेध भयो, 'बुभूष' भयो, "सनाद्यन्ताः०"ले धातुसंज्ञा **भयो** । बुभूष धातुदेखि लट्, तिप्, शप् प्रत्यय, पररूप भयो, 'बुभूषति' सिद्ध भयो । लिट्मा बुभूषाञ्चकार । बुभूषाम्बभूव आदि रूप हुन्छन् । यस्तै अरू लकारमा हुने रूपहरूको पनि ऊह गर्नू ।

**सन्नन्त प्रकरण सकियो ।**

---------------

## अथ यङन्तप्रक्रिया

**७०८. धातोरेकाचो हलादेः क्रियासमभिहारे यङ् ३।१।२२॥**
पौनः पुन्ये भृशार्थे च द्योत्ये धातोरेकाचो हलादेर्यङ् स्यात् ॥
**७०९. गुणो यङ्लुकोः ७।४।८२॥**
अभ्यासस्य गुणो यङि यङ्लुकि च परतः । ङिदन्तत्वादात्मनेपदम् । पुनः पुनरतिशयेन वा भवति बोभूयते । बोभूयाञ्चक्रे । अबोभूयिष्ट ॥

---

**अब यङन्तप्रकरण शुरू हुन्छ ।**

**धातोरिति–** क्रियाको बारंबार हुनु अर्थ र अतिशय हुनु अर्थ द्योत्य भएको एकाच् हलादिधातुदेखि यङ् प्रत्यय होस् । यङ् प्रत्यय गर्ने सूत्रमा एकाच् र हलादि धातुदेखि यङ् हुने भनिएकोले अनेकाच् धातु र अजादि धातुदेखि यङ् प्रत्यय हुँदैन ।

**गुण इति–** अभ्यासका इक्का स्थानमा [१००] गुण होस्, यङ् र यङ्लुक् पर भएमा । ङित् धातु हुनाले यङन्तदेखि अनुदात्तङित लाएर आत्मनेपद हुन्छ ।

पुनः पुनः अथवा अतिशयेन यो अर्थ क्रियामा जोडिएमा यङ् प्रत्यय हुन्छ । बारम्बार त्यो क्रियाहुनु वा अतिशय रूपमा हुनु भन्ने यसको अर्थ हो ।

**बोभूयते–** पुनः पुनः अतिशयेन वा भवति (बारम्बार वा अतिशय रूपमा हुन्छ), यस अर्थमा यो भू धातु एकाच् र हलादि हुनाले भू धातुदेखि "धातोरेकाचो०"ले यङ् प्रत्यय भयो, यङ्का ङकारको इत्संज्ञा र लोप भयो, 'भू+य' भयो, "सन्यङोः"ले भूको द्वित्व, हलादिशेष 'भूभूय', "गुणो यङ्लुकोः"ले गुण, जश्त्व, 'बोभूय' भयो, 'बोभूय'लाई "सनाद्यन्ता धातवः"ले धातु संज्ञा भयो ।

बोभूय धातुदेखि "लः कर्मणि०"ले कर्ता अर्थमा, वर्तमानकालमा लट्लकार भयो, "अनुदात्तङितः०"ले बोभूय धातु ङित् हुनाले आत्मनेपद प्रथमपुरुष एकवचन त भयो, तका अकारको एत्व भयो, शप् प्रत्यय भयो, 'बोभूय+अते', पररूप, 'बोभूयते' सिद्ध भयो ।

**लिट्मा–** बोभूय धातुदेखि "कास्यनेकाचः०" ले आम् हुन्छ र बोभूयका अकारको "अतो लोपः"ले लोप हुन्छ, 'बोभूयाम्' हुन्छ । बोभूयाम् यसदेखि लिट् पर हुने कृ, भू, अस्को अनुप्रयोग हुन्छ, "आम्प्रत्ययवत्०" लगाएर अनुप्रयुक्त कृ धातुदेखि आत्मनेपद र भू धातु र अस् धातुदेखि परस्मैपद हुन्छ । बोभूयाञ्चक्रे । बोभूयाम्बभूव । बोभूयामास यी रूप हुन्छन् । यस्तै प्रकारले अरू रूप पनि सिद्ध गर्नू ।

बोभूयिता बोभूयिष्यते । लुट् र लृट् लकारमा पनि बोभूयका अकारको "अतो लोपःले लोप हुन्छ । बोभूयिता, बोभूयिष्यते आदि रूप हुन्छन् । अन्यत्र पनि आर्धधातुक प्रत्यय पर भएमा "अतो लोपः"ले बोभूयका अकारको लोप हुन्छ । **लोट् आदि लकारमा–** बोभूयताम् । अबोभूयत । बोभूयेत । बोभूयिषीष्ट । अबोभूयिष्ट । अबोभूयिष्यत आदि रूप हुन्छन् ।

---

१०० "इको गुणवृद्धी" यो सूत्र लाएर 'इकः' यो षष्ठयन्तपद उपस्थित हुन्छ, तब अभ्यासका इक्का स्थानमा यो अर्थ हुन्छ ।

**७१०. नित्यं कौटिल्ये गतौ ३।१।२३॥**

गत्यर्थात्कौटिल्य एव यङ् स्यान्न तु क्रियासमभिहारे ॥

**७११. दीर्घोऽकितः ७।४।८३॥**

अकितोऽभ्यासस्य दीर्घो यङ्यङ्लुकोः । कुटिलं व्रजति वाव्रज्यते ॥

**७१२. यस्य हलः ६।४।४९॥**

यस्येति सङ्घातग्रहणम् । हलः परस्य यशब्दस्य लोप आर्धधातुके । "आदेः परस्य" । "अतो लोपः" । वाव्रजाञ्चक्रे । वाव्रजिता ॥

**७१३. रीगृदुपधस्य च ७।४।९०॥**

ऋदुपधस्य धातोरभ्यासस्य रीगागमो यङ्यङ्लुकोः । वरीवृत्यते ।

---

**नित्यमिति**– गत्यर्थक धातुदेखि कौटिल्य अर्थ बुझिएमा मात्र यङ् होस्, क्रियासमभिहार अर्थ बुझिएमा त नहोस् ।

**दीर्घ इति**– अकित् अभ्यासका स्थानमा दीर्घ होस्, यङ् र यङ्लुक् पर भएमा । नुक् आगम हुने स्थलमा अभ्यास कित् हुन्छ, त्यहाँ दीर्घ नहोस् भन्ने अभिप्रायले सूत्रमा "अकितः" भनिएको हो । नुक् आगम हुने धातु लघुकौमुदीमा दिएको छैन तापनि यो कुरा बुझेपछि सूत्रको आशय स्पष्ट हुने हुनाले यहाँ यो कुरा उल्लेख गरिएको हो ।

**वाव्रज्यते**– कुटिलं व्रजति (बाङ्गो हिंड्छ) यस अर्थमा व्रज धातुदेखि "नित्यं कौटिल्ये गतौ" यस सूत्रले यङ्, द्वित्व, हलादिशेष भयो, "दीर्घोऽकितः"ले अभ्यासको दीर्घ, 'वाव्रज्य' भयो, वाव्रज्यलाई "सनाद्यन्ता धातवः"ले धातुसंज्ञा भयो । वाव्रज्य धातुदेखि लट्, त, एत्व, शप्, पररूप भयो, 'वाव्रज्यते' सिद्ध भयो ।

**यस्येति**– हल्देखि पर रहेका य शब्दको लोप होस्, आर्धधातुकसंज्ञक प्रत्यय पर भएमा । "आदेः परस्य" यो सूत्र लाएर यकारको लोप हुन्छ । त्यसपछि "अतो लोपः"ले अकारको लोप हुन्छ ।

**वाव्रजाञ्चक्रे**– (कुटिल वव्राज यो विग्रहमा) यङन्त व्रज् धातु अर्थात् वाव्रज्य धातुदेखि लिट् पर भएमा "कास्यनेकाच०"ले आम्प्रत्यय भयो, 'वाव्रज्य+आम्+ल्' भयो, "यस्य हलः"ले "आदेःपरस्य" लाएर यकारको लोप भयो, "अतो लोपः"ले अकारको लोप, "आमः"ले लिट्को लुक् भयो, 'वाव्रजाम्' भयो, वाव्रजाम् देखि लिट् पर हुने कृ धातुको अनुप्रयोग आदि पूर्ववत् भयो, 'वाव्रजाञ्चक्रे' सिद्ध भयो । भू धातुको अनुप्रयोगमा 'वाव्रजाम्बभूव' अस् धातुको अनुप्रयोगमा वाव्रजामास हुन्छ । यस्तै प्रकारले अरू रूप पनि जान्नू । यहाँ कृ धातुको अनुप्रयोगमा "आम्प्रत्ययवत् कृञोऽनुप्रयोगस्य"ले आत्मनेपद हुन्छ । भू र अस्को अनुप्रयोगमा "शेषात्कर्तरि०"ले परस्मैपद हुन्छ ।

**वाव्रजिता**– वाव्रज्य धातुदेखि लुट्, त, तासि प्रत्यय इट् आगम, डा आदेश, टिलोप, 'वाव्रज्य+इता' यहाँ यकारको "यस्य हलः"ले अकारको "अतो लोपः"ले लोप भयो, 'वाव्रजिता' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप सिद्ध गर्नू ।

**लृट्मा** वाव्रजिष्यते आदि । **लोट्मा** वाव्रज्यताम् आदि । **लङ्मा** अवाव्रज्यत आदि । **विधिलिङ्मा** वाव्रंज्येत आदि । **आशीर्लिङ्मा** वाव्रजिषीष्ट आदि । **लुङ्मा** अवाव्रजिष्ट आदि । **लृङ्मा** अवाव्रजिष्यत आदि रूप हुन्छन् ।

**रीगिति**– ऋकार उपधामा हुने धातुको रीक् आगम होस्, यङ् र यङ्लुक् पर भएमा ।

**वरीवृत्यते**– पुनः पुनः अतिशयेन वा वर्तते (बारम्बार अथवा अतिशय रहन्छ) यस अर्थमा

वरीवृताञ्चक्रे । वरीवर्तिता ॥

**७१४. क्षुभ्नादिषु च ८।४।३९॥**

णत्वं न । नरीनृत्यते जरीगृह्यते ॥

**इति यङन्तप्रक्रिया ॥**

---

वृत् धातुदेखि यङ् भयो, द्वित्व, अभ्यासकार्य भएपछि, 'ववृत्य' भयो, "रीगृदुपधस्य च"ले अभ्यासको रीक् आगम भयो, 'वरीवृत्य' भयो, वरीवृत्यलाई धातुसंज्ञा भयो, वरीवृत्य धातुदेखि लट् लकार, तिप्, शप्, पररूप भयो, 'वरीवृत्यते' सिद्ध भयो । यस्तै प्रकारले लट्का अरू रूप पनि सिद्ध गर्नू ।

**वरीवृताञ्चक्रे**– वरीवृत्य धातुदेखि लिट् भयो, "कास्यनेकाच०"ले आम् भयो, आम्लाई आर्धधातुकसंज्ञा भयो, "यस्य हलः"ले "आदेः परस्य" लाएर यकारको लोप, "अतो लोपः"ले अकारको लोप भयो, 'वरीवृताम्+ल्' भयो, लिट्को लुक भयो, "कृञ्चानुप्रयुज्यते०"ले लिट् पर हुने कृको अनुप्रयोग र लकारका स्थानमा त, एत्व, कृ धातुको द्वित्वादि पूर्ववत् भयो, 'वरीवृताञ्चक्रे' सिद्ध भयो । भूधातुको अनुप्रयोगमा पूर्ववत् 'वरीवृताम्बभूव' र अस्को अनुप्रयोगमा वरीवृतामास आदि रूप हुन्छन् ।

**वरीवृतिता**– वरीवृत्यधातुदेखि लुट्, त, तासि प्रत्यय, इट् आगम, डा आदेश, टिलोप, 'वरीवृत्य+इता' यहाँ "यस्य हलः"ले "आदेःपरस्य" लाएर यकारको लोप, "अतो लोपः"ले अकारको लोप भयो, 'वरीवृतिता' सिद्ध भयो । यहाँ अलोपको "अचः परस्मिन्पूर्वविधौ"ले स्थानिवद्भाव हुने हुनाले लघूपधगुण भएन ।

लृट् आदि लकारमां क्रमशः वरीवृतिष्यते । वरीवृत्यताम् । अवरीवृत्यत । वरीवृत्येत । वरीवृतिषीष्ट । अवरीवृतिष्ट । अवरीवृतिष्यत आदि रूप हुन्छन् ।

**क्षुभ्नादीति**– क्षुभ्नादि गणपठित शब्दका नकारका स्थानमा णत्व नहोस् । यङन्त नृत्धातु क्षुभ्नादिगणमा पर्दछ ।

**नरीनृत्यते**– पुनः पुनः अतिशयेन वा नृत्यति (फेरि फेरि वा अतिशय नाच्दछ ।) यस अर्थमा "धातोरेकाचो०"ले नृत् धातुदेखि यङ्, द्वित्व, अभ्यासकार्य भयो, "रीगृदुपधस्य च" रीक्आगम भयो, 'नरीनृत्य' भयो, नरीनृत्यलाई "सनाद्यन्ता"ले धातुसंज्ञा भयो, नरीनृत्यधातुदेखि लट्, त, शप्, पररूप, भयो, 'नरीनृत्यते' भएपछि पल्लो नकारको "अट्कुप्वाङ्०"ले णत्व पाएमा "क्षुभ्नादिषु च"ले णत्वको निषेध भयो, 'नरीनृत्यते' सिद्ध भयो । यस्तै गरी लट्लकारका अरू रूप सिद्ध गर्नू ।

लिट् आदि लकारमा क्रमशः नरीनृताञ्चक्रे । नरीनृतिता । नरीनृतिष्यते । नरीनृत्यताम् । अनरीनृत्यत । नरीनृत्येत । नरीनृतिषीष्ट । अनरीनृतिष्ट । अनरीनृतिष्यत आदि रूप हुन्छन् ।

**जरीगृह्यते**– पुनः पुनः अतिशयेन वा गृह्णाति (फेरि फेरि अथवा अत्यन्त ग्रहण गर्दछ) यो अर्थमा ग्रहधातुदेखि यङ् भयो, 'ग्रह्+य', यहाँ "ग्रहिज्यावयि०"ले संप्रसारण भयो, 'गृह्+य', द्वित्व, अभ्यासकार्य भयो, 'जगृह्+य' भयो, "रीगृदुपधस्य च"ले रीक् भयो, 'जरीगृह्य' भयो, जरीगृह्यलाई धातुसंज्ञा भयो । जरीगृह्य धातुदेखि लट् त आदि भयो, 'जरीगृह्यते' सिद्ध भयो । लिट् आदि लकारमा क्रमशः जरीगृहाञ्चक्रे । जरीगृहाम्बभूव । जरीगृहामास । जरीगृहिता । जरीगृहिष्यते । जरीगृह्यताम् । अजरीगृह्यत । जरीगृह्येत । जरीगृहिषीष्ट । अजरीगृहिष्ट । अजरीगृहिष्यत आदि रूप हुन्छन् ।

**यङन्त प्रक्रिया सकियो ।**

--------------

## अथ यङ्लुक्प्रक्रिया

**७१५. यङोऽचि च २।४।७४॥**

यङोऽचि प्रत्यये लुक् स्यात्, चकारात्तं विनापि क्वचित्। अनैमित्तिकोऽयमन्तरङ्गत्वादादौ भवति। ततः प्रत्ययलक्षणेन यङन्तत्वाद् द्वित्वम्। अभ्यासकार्यम्। धातुत्वाल्लडादयः। शेषात्कर्तरीति परस्मैपदम्। चर्करीतं चेत्यदादौ पाठाच्छपो लुक्॥

**७१६. यङो वा ७।३।९४॥**

यङ्लुगन्तात्परस्य हलादेः पितः सार्वधातुकस्येड् वा स्यात्। भूसुवोरिति गुणनिषेधो यङ्लुकि भाषायां न, 'बोभूतु तेतिक्ते' इति छन्दसि निपातनात्। बोभवीति, बोभोति।

---

**अब यङ्लुगन्त प्रक्रिया शुरू हुन्छ।**

**यङ इति**– यङ्को अच् आदिमा हुने प्रत्यय पर भएमा लुक् होस्, चकार पढ्नाले कहीं अच् आदिमा हुने प्रत्यय पर नभएमा पनि लुक् होस्।

**अनैमित्तिक इति**– यो यङ्को लुक् अनैमित्तिक हुनाले सबभन्दा पहिले हुन्छ। त्यसपछि "प्रत्ययलोपे प्रत्ययलक्षणम्" लगाएर द्वित्व, अभ्यासकार्य हुन्छ। धातुत्व हुनाले लट् आदि लकार हुन्छन्। यङ् लुगन्तमा-

**"श्तिपा शपाऽनुबन्धेन निर्दिष्टं यद् गणेन च।**
**यत्रैकाज्ग्रहणं चैव पञ्चैतानि न यङ्लुकि"**

यो कारिकाको उक्ति अनुसारले अनुबन्धनिर्दिष्ट हुनाले "अनुदात्तङित०"ले आत्मनेपद हुँदैन। "शेषात्कर्तरि परस्मैपदम्"ले परस्मैपद मात्र हुन्छ। "चर्करीतं च" भनेर यङ्लुक् प्रक्रिया अदादिगणभित्र पढिएको हुनाले शप्को लुक् हुन्छ। यङ् लुगन्तमा सबै धातुदेखि परस्मैपद हुन्छ। सबै धातुदेखि शप् प्रत्यय मात्र हुन्छ र लुक् हुन्छ।

**यङोवेति**– यङ्लुगन्त धातुदेखि पर रहेका हल् आदिमा हुने पित् सार्वधातुकसंज्ञक प्रत्ययको ईट् आगम विकल्पले होस्।

"भूसुवो०" यस सूत्रले गुणनिषेध यङ्लुगन्तमा भाषामा हुँदैन। "बोभूतु तेतिक्ते" यो वेदमा निपातन गरेको हुनाले। "भूसुवोस्तिङि"ले वेदमा पनि निषेध गर्दथ्यो, वेदमा 'बोभूतु' तेतिक्ते यी प्रयोग निपातन [१०१] गरियो। अतः लोकमा गुणनिषेध हुने भएन।

**बोभवीति/बोभोति**– पुनः पुनः, अतिशयेन वा भवति (फेरि फेरि अथवा अतिशय रूपमा हुन्छ) यस अर्थमा भू धातुदेखि "धातोः कर्मणः" यो सूत्रले यङ् भयो, 'भू+य' भयो, "यङोऽचि च"ले

---

१०१ भैरहेको (स्वतः पाएको) निषेध पुनः निपातन गर्नाले अर्थ यो आयो, 'वेदे एव गुणनिषेधो न तु लोके' (वेदमा मात्र गुणनिषेध हुन्छ लोकमा हुन्न।)

**बोभूतः** "अदभ्यस्तात्" । बोभुवति । बोभवाञ्चकार, बोभवामास । बोभविता । बोभविष्यति । बोभवीतु, बोभोतु, बोभूतात् । बोभूताम् । बोभुवतु । बोभूहि । बोभवानि ।

---

"चकारात्तं विनाऽपि क्वचित्" (चकार पढिएको हुनाले अजादिप्रत्यय पर नभए पनि लुक् होस् ) भनेकाले यङ्को लुक् भयो, 'भू' बाँकी रह्यो "प्रत्ययलोपे०" लगाएर "सन्यडोः"ले भूको द्वित्व, अभ्यासकार्य भयो, 'बुभू' भयो, "गुणो यङ्लुकोः"ले अभ्यासका उकारको गुण भएर ओकार भयो, 'बोभू' भयो, बोभू यसलाई "सनाद्यन्ताः"ले धातुसंज्ञा भयो ।

बोभू धातुदेखि लट्लकार लकारका स्थानमा "अनुदात्तङित०"ले आत्मनेपद पायो, पाएमा श्तिपा शपाऽनुबन्धेन०" यो कारिकाले निषेध भयो, अनि "शेषात्कर्तरि०"ले परस्मैपद प्रथमपुरुष एकवचन तिप्, शप्प्रत्यय "चर्करीतं च" द्वारा यङ्लुगन्तको अदादिमा पाठ हुनाले "अदिप्रभृतिभ्यः शपः"ले शप्को लुक् भयो, "यङो वा"ले तिको वैकल्पिक ईट् आगम भयो, 'बोभू+ईति', बोभूका ऊकारका स्थानमा "सार्वधातुका०"ले गुण पाएको प्रकृतिग्रहणे यङ्लुगन्तस्यापि ग्रहणम् यो परिभाषा लगाएर "भूसुवोस्तिङि"ले निषेध पाएकोमा "बोभुतु तेतिक्ते" यो सूत्रले 'भू+सू' यी दुईको वेदमा यङ्लुक्मा गुणनिषेध निपातन गर्नु नै ज्ञापक भएकोले लोकमा गुण निषेध भएन, गुण नै भयो, 'बोभो+ईति', अव् आदेश भयो, 'बोभवीति' सिद्ध भयो । ईट् नभएका पक्षमा 'बोभोति' सिद्ध भयो । यसरी दुई रूप भए ।

**बोभूतः**– पूर्ववत् यङ्लुगन्त बोभू धातुदेखि लट्, प्रथमपुरुषको द्विवचन तस् भयो, 'बोभू+तस्', यहाँ तस्, ङित् हुनाले "सार्वधातुकार्ध०"ले पाएको गुणनिषेध भयो, रुत्व, विसर्ग भयो, 'बोभूतः' सिद्ध भयो ।

**बोभुवति**– बोभू धातुदेखि लट्लकार परस्मैपद प्रथमपुरुष बहुवचन झि आयो, 'बोभू+झि' भयो, बोभूलाई "उभे अभ्यस्तम्"ले अभ्यस्तसंज्ञा भएपछि, "अदभ्यस्तात्"ले झिका झकारका स्थानमा अत् भयो, 'बोभू+अति' भयो, अतिमा ङित्त्व हुनाले गुणनिषेध भयो, "अचिश्नुधातु०"ले भूका उकारका स्थानमा उवङ् आदेश भयो, 'बोभूवति' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप सिद्ध गर्नू । बाँकी रूप- बोभवीषि/बोभोषि, बोभूथः, बोभूथ । बोभवीमि/बोभोमि, बोभूवः, बोभूमः ।

**लिट्मा** आम् प्रत्यय हुन्छ, पूर्ववत् लिट्को लुक् भएपछि लिट् परहुने कृ भू अस्धातुको अनुप्रयोग हुन्छ । बोभवाञ्चकार । बोभवाम्बभूव । बोभवामास आदि रूप हुन्छन् ।

यहाँ कसै कसैले भू धातुमा भू धातुको अनुप्रयोग हुन्न भनेका छन् तर माधवीय धातुवृत्तिकारले कर्मव्यतिहारमा यङ्लुगन्त व्यतिबोभू धातुको लिट्मा 'व्यतिबोभवाम्बभूव' यो उदाहरण दिएका छन्, अतः भूधातुमा पनि भू धातुको अनुप्रयोग हुन्छ ।

**बोभविता**– लुट्मा 'बोभू+इता', यहाँ गुण अव् आदेश भएर 'बोभविता' सिद्ध हुन्छ । यस्तै प्रकारले अरू रूप जान्नू ।

**बोभविष्यति**– 'बोभू+ इष्यति' गुण, अव् आदेश भएर 'बोभविष्यति' सिद्ध हुन्छ । यस्तै प्रकारले अरू रूप जान्नू ।

**लोट्मा** हि अपित् हुनाले इट् हुँदैन, त्यस्तै तातङ् पनि अपित् हुनाले ईट् हुँदैन । सबै रूप तल दिइन्छ ।

बो भू. लोट् - (यङ्लुक्)

| **पुरुष** | **एकवचन** | **द्विवचन** | **बहुवचन** |
|---|---|---|---|
| प्रथमपुरुष | वोभवीतु/बोभोतु/बोभूतात् | बोभूताम् | बोभुवतु |
| मध्यमपुरुष | बोभूहि/बोभूतात् | बोभूतम् | बोभूत |
| उत्तमपुरुष | बोभवानि | बोभवाम | बोभवाम |

अबोभवीत्, अबोभोत्। अबोभूताम्। अबोभवुः। बोभूयात्। बोभूयाताम्। बोभूयुः। बोभूयात्। बोभूयास्ताम्। बोभूयासुः। गातिस्थेति सिचो लुक्। यङो वेतीट्पक्षे गुणं बाधित्वा नित्यत्वाद् वुक्। अबोभूवीत्, अबोभोत्। अबोभूताम्। अबोभूवुः। अबोभविष्यत्॥

**इति यङ्लुक्प्रक्रिया॥**

---

| लङ्मा- | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| | प्रथमपुरुष | अबोभवीत्/अबोभोत् | अबोभूताम् | अबोभवुः |
| | मध्यमपुरुष | अबोभवीः/अबोभोः | अबोभूतम् | अबोभूत |
| | उत्तमपुरुष | अबोभवम् | अबोभूव | अबोभूम |

जुस्मा "सिजभ्यस्त०"ले जुस् र "जुसि च" ले गुण हुन्छ।

**बोभूयात्-** विधिलिङ्मा 'बोभू+अ+यास्+ति', यहाँ शप्को लुक् तिका इकारको लोप, 'बोभूयास्+त्' सकारको संयोगादिलोप, 'बोभूयात्' सिद्ध भयो। बाँकी रूप- बोभूयाताम्, बोभूयुः। बोभूयाः, बोभूयातम्, बोभूयात, बोभूयाम्। बोभूयाव। बोभूयाम।

**आशीर्लिङ्मा-** बोभूयात् यहाँ सकारको संयोगादिलोप भयो। "लिङः सलोपो०" लागेन।

बाँकी रूप- बोभूयास्ताम्, बोभूयासुः। बोभूयाः, बोभूयास्तम्, बोभूयास्त। बोभूयासम्, बोभूयास्व, बोभूयास्म।

**गातिस्थेति-** लुङ्मा "गातिस्थाघुपाभूभ्यः०"ले सिच्को लुक् हुन्छ। "यङो वा"ले इट् भएको पक्षमा गुणलाई बाधेर नित्यत्वात् वुक् हुन्छ, अर्थात् "सार्वधातुकार्धधातुकयोः" अनित्य छ "भुवो वुग्लुङ्लिटोः" नित्य छ किनभने वुक् आगम गरेपछि इगन्त अङ्ग रहँदैन र गुण हुँदैन तर गुण गरेपछि वुक् आगम गर्न अजादि प्रत्यय पर हुने नै हुनाले वुक् पाउँछ। अतः वुक् नित्य छ। यहाँ "कृताकृतप्रसङ्गी विधिर्नित्यः" यो परिभाषा सम्झनु पर्छ।

**अबोभूवीत्/अबोभोत्-** बोभू धातुदेखि लुङ्, अट्आगम 'अबोभू+ल्', तिप्, च्लि, सिच्, तिका इकारको लोप, सिच्को लुक्, 'अबोभू+त्', यहाँ "यङो वा"ले तकारको वैकल्पिक ईट् आगम भयो, 'अबोभू+ईत्' भयो, यहाँ "सार्वधातुकार्ध०"ले गुण पायो, त्यसलाई बाधेर नित्यत्वात् "भुवो वुग्लुङ्लिटोः"ले वुक् आगम भयो। 'अबोभूवीत्' सिद्ध भयो। वुक् नभएको पक्षमा गुण भयो, 'अबोभोत्' सिद्ध भयो। यसरी यी दुई रूप सिद्ध भए।

**अबोभूताम्-** द्विवचन तस्मा 'अबोभू+स्+ताम्', यहाँ सिच्को लुक् भएपछि "सार्वधातुकमपित्"ले ताम्मा ङित्त्व हुनाले गुण भएन 'अबोभूताम्' सिद्ध भयो।

**अबोभूवुः-** झिमा सिच्को लुक् भएपछि 'अबोभू+झि', यहाँ "सिजभ्यस्त०"ले जुस् भयो, यहाँ पनि "जुसि च"ले पाएको गुणलाई बाधेर नित्यत्वाद् वुक् आगम भयो, 'अबोभूवुः' सिद्ध भयो।

यहाँ [१०२] माधवीय धातुवृत्तिकारको मतमा झिका स्थानमा जुस् हुँदैन, अन्त् आदेश हुन्छ

---

१०२ "अबोभूवन्नित्यच सिचः प्रत्ययलक्षणेन जुस्भाव "आत" इति नियमान्न भवति। अभ्यस्ताश्रयस्तु विदिसाहचर्याल्लङ् विषय इति नेह प्रसज्यते। विदेर्ह्यव्यवहितो झिर्लङ्चेव संभवति। न च सिचा साहचर्याल्लुङ्विषयोऽपि भवतीति वाच्यम्।" "विप्रतिषेधे परम्०" इति परसाहचर्यस्य बलीयस्त्वात्" यो माधवीय धातुवृत्तिकारको उक्ति हो।

## अथ नामधातवः

**७१७. सुप आत्मनः क्यच् ३।१।८॥**

इषिकर्मण एषितुः संवन्धिनः सुबन्तादिच्छायामर्थे क्यच् प्रत्ययो वा स्यात् ॥

**७१८. सुपो धातुप्रातिपदिकयोः २।४।७१॥**

एतयोरवयवस्य सुपो लुक् ॥

**७१९. क्यचि च ७।४।३३॥**

अवर्णस्य ईः । आत्मनः पुत्रमिच्छति पुत्रीयति ॥

---

र 'अबोभूवन्' हुन्छ। सिद्धान्तकौमुदी मूलमा "अभ्यस्ताश्रयो जुस्" यति मात्र छ। त्यसको व्याख्यानमा तत्वबोधिनीकारले सिच्देखि पर भएको झिका स्थानमा प्राप्त जुस्को "आतः"ले निषेध हुन्छ, अभ्यस्ताश्रयको निषेध हुन्न । अतः यहाँ जुस् नै हुन्छ भनेका छन् । यहाँ सिद्धान्तकौमुदी एवं तत्वबोधिनीकारको मत अनुसरण गरेर जुस् गरियो । बाँकी रूप- अबोभूवीः, अबोभोः, अबोभूतम्, अबोभूत । अबोभूवम्, अबोभूव, अबोभूम । **लृङ्मा** अबोभविष्यत् आदि रूप हुन्छन् ।

**यङ्लुगन्त सकियो ।**

------------

**अब नामधातुप्रकरण शुरू हुन्छ ।**

यो प्रकरणलाई नामधातु भन्नको कारण नामबाट अर्थात् कुनै शब्दबाट धातु निर्माण गरिन्छ र त्यसबाट लट् आदि लकार हुन्छन् । यहाँ नाम, सर्वनाम, विशेषण, अव्यय सबै प्रातिपदिक धातु बन्दछन् ।

**सुप इति**– इष् धातुको कर्मीभूत व्यापार बोधक इष् धातुका कर्तासँग सम्बन्धित सुबन्तदेखि इच्छा अर्थ बुझिँदामा क्यच् प्रत्यय होस् । सूत्रमा आत्मनः यो विशेषण दिएको हुनाले 'आत्मनः पुत्रम् इच्छति' (आफूलाई छोराको इच्छा गर्छ) यो अर्थमा क्यच् हुन्छ, 'परस्य पुत्रम् इच्छति' (अर्कालाई छोरा होस् भन्ने इच्छा गर्छ) यो अर्थमा यहाँ क्यच्प्रत्यय हुँदैन ।

**सुप इति**– धातु र प्रातिपदिकको अवयव सुप्को लुक् होस् ।

**क्यचि चेति**– क्यच् प्रत्यय पर भएमा अवर्णका स्थानमा दीर्घ ईकार होस् ।

**पुत्रीयति**– आत्मनः पुत्रम् इच्छति (आफूलाई छोरा इच्छा गर्छ) भन्दा पुत्र अम् यसदेखि "सुप आत्मनः०"ले क्यच् प्रत्यय भयो, क र चको इत्संज्ञा लोप भयो, 'पुत्र+अम्+य' भयो, 'पुत्र+अम्+य', यसलाई "सनाद्यन्ता धातवः"ले धातुसंज्ञा भयो, "सुपो धातुप्रादिकयोः"ले सुप् अम्को लुक् भयो, 'पुत्र+य' भयो, "क्यचि च"ले पुत्रका अकारका स्थानमा दीर्घ ईकार भयो, पुत्रीय भयो । पुत्रीयलाई धातुसंज्ञा भएकैछ, पुत्रीय धातुदेखि लट् लकार भयो, "शेषात्कर्तरि०"ले परस्मैपद तिप्, शप्, पररूप भयो, 'पुत्रीयति' सिद्ध भयो ।

---

**७२०. नः क्ये १।४।१५॥**

क्यचि क्यङि च नान्तमेव पदं नान्यत् । नलोपः । राजीयति । नान्तमेवेति किम् ? वाच्यति । "हलि च" । गीर्यति । पूर्यति ।

---

लिट् लकारमा [१०३] पुत्रीयाञ्चकार । पुत्रीयाम्बभूव । पुत्रीयामास आदि रूप पूर्ववत् हुन्छन् । लुट् आदि लकारमा क्रमशः [१०४] पुत्रीयिता । [१०५] पुत्रीयिष्यति । [१०६] पुत्रीयतु । [१०७] अपुत्रीयत् । [१०८] पुत्रीयेत् । [१०९] पुत्रीय्यात् । [११०] अपुत्रीयीत् । [१११] अपुत्रीयिष्यत् आदि रूप हुन्छन् । नाम धातुमा नित्य इट् आगम हुन्छ अनेकाच्, एकाच्, नामधातु प्रत्ययान्त सबै सेट् धातु हुन् । यी सबै निर्मित धातु हुन्, उपदिष्ट हैनन् । अत "एकाच उपदेशेऽनुदात्तात्" लाग्दैन ।

**न इति–** क्यच् र क्यङ् प्रत्यय पर भएमा नकारान्त प्रातिपदिकमात्र पदसंज्ञक हुन्छ अरू हुन्न । यो नियम सूत्र हो "सुप्तिङन्तं पदम्"लाई यसले नियन्त्रण गर्छ ।

**राजीयति–** राजानम् आत्मन इच्छति (आफूसम्बन्धी राजाको इच्छा गर्छ), यस विग्रहमा राजन् अम्देखि "सुप आत्मनः"ले क्यच् भयो, 'राजन्+अम्+य' भयो, धातुसंज्ञा भयो, "सुपो धातुप्रातिपदिकयोः"ले अम्को लुक् भयो, 'राजन्+य' भयो, राजन्लाई "प्रत्ययलोपे०" लगाएर "सुप्तिङन्तं पदम्"ले पदसंज्ञा पाएमा "नः क्ये"ले क्यच् क्यङ् पर भएमा नकारान्त मात्र पदसंज्ञक होस् भनेकोले यहाँ नकारान्त नै छ र राजन्लाई पदसंज्ञा भयो र "नलोपः प्रातिपदिकान्तस्य"ले नकारको लोप भयो, 'राज+य' भयो, "क्यचि च"ले राजका अकारका स्थानमा ईकार भयो, 'राजीय' धातु भयो, राजीय धातुदेखि लट्, तिप्, शप् पररूप भयो, 'राजीयति' सिद्ध भयो । यस्तै प्रकारले अरू रूप सिद्ध गर्नू ।

**राजीयाञ्चकार–** राजानमात्मन इयेष (आफूसम्बन्धी राजाको इच्छा गर्‍यो), यस अर्थमा पूर्ववत् राजन् अम्देखि क्यचप्रत्यय भयो, पूर्ववत् 'राजीय' सिद्ध भयो । राजीयधातुदेखि लिट्, आम्, अकारको लोप, लिट्को लुक्, कृधातुको अनुप्रयोग आदि पूर्ववत् भयो, 'राजीयाञ्चकार' सिद्ध भयो । यस्तै प्रकारले भूधातु र अस् धातुको अनुप्रयोगमा राजीयाम्बभूव, राजीयामास आदि रूप जान्नू ।

**लुट् आदि लकारमा–** राजीयिता, राजियिष्यति आदि रूप पनि पूर्ववत् सिद्ध गर्नू ।

**नान्तमेवेति किमिति–** क्यच् क्यङ् परभएमा नकारान्तमात्र पदसंज्ञक होस् किन भन्नु ? नभन्ने हो भने सूत्र नै प्रत्याख्यात होला र वाचम् आत्मन इच्छति यस अर्थमा वाच् अम् यसदेखि क्यच् प्रत्यय सुप्को लुक् भयो, 'वाच्+य' भयो, यहाँ "सुप्तिङन्तं पदम्"ले पदसंज्ञा होला र "चोः कुः"ले कुत्व भएर वाक्य होला, सो नहोस् भनेर अतः "नः क्ये" सूत्र पढ्यौं । यो सूत्र पढेपछि क्यच् क्यङ् पर भएमा नकारान्त मात्र पदसंज्ञक होस् भन्ने अर्थ भयो । यहाँ वाच् चकारान्त प्रातिपदिक छ र पदसंज्ञा भएन वाच्य यस्तै रह्यो, वाच्य धातुदेखि लट्, तिप्, शप्, पररूप भयो, 'वाच्यति' सिद्ध भयो ।

**हलिचेति–** "हलि च"ले उपधाको दीर्घ हुन्छ ।

**गीर्यति, पूर्यति–** गिरमात्मन इच्छति, (आफ्नो वाणीको इच्छा गर्छ) यस अर्थमा 'गिर्+अम्'

---

१०३ यहाँ पुत्रमात्मन इयेष आफूसम्बन्धी छोराको इच्छा गर्‍यो, यो विग्रह हुन्छ । यस्तै अन्यत्र पनि विग्रहको रूप फरक फरक हुन्छ । १०४ पुत्रमात्मन एष्टा (आफूसम्बन्धी छोराको इच्छा गर्नेछ ।)

१०५ पुत्रमात्मन एषिष्यति (आफूसम्बन्धी छोराको इच्छा गर्नेछ ।)

१०६ पुत्रमात्मन इच्छतु १०७ पुत्रमात्मन ऐच्छत् । १०८ पुत्रमात्मन इच्छेत् ।

१०९ पुत्रमात्मन इष्यात् । ११० पुत्रमात्मन ऐषीत् ।

१११ पुत्रमात्मन ऐषिष्यत् । यी पुत्रीय धातुमा प्रत्येक लकारका विग्रह हुन् । यस्तै अरू धातुमा पनि ऊह गर्नू । सन्, यङ् आदि प्रत्ययमा पनि यसरी विग्रहको ऊह गर्नुपर्छ ।

धातोरित्येव । नेह–दिवमिच्छति दिव्यति ॥

**७२१. क्यस्य विभाषा ६।४।५०॥**

हलः परयोः क्यच्क्यङोर्लोपो वार्धधातुके । "आदेः परस्य" । "अतो लोपः" । तस्य स्थानिवत्त्वाल्लघूपधगुणो न । समिधिता, समिध्यिता ॥

---

देखि क्यच् प्रत्यय भयो, सुप्को लुक् भयो, 'गिर्+य' भयो, यहाँ पनि "नः क्ये"ले पदत्व निषेध भएकोले "र्वोरुपधायाः०"ले दीर्घ भएन, "हलि च"ले दीर्घ भयो, 'गीर्य' भयो, लट्, तिप्, शप्, भयो, 'गीर्यति' सिद्ध भयो । यस्तै प्रकारले 'पूर्यति' पनि सिद्ध हुन्छ ।

**धातोरिति**– धातुका रेफवकारको मात्र हुन्छ, त्यसकारणले दिव्यति यहाँ दीर्घ हुन्न ।

**दिव्यति**– दिवम् आत्मन इच्छति (स्वर्ग आफूलाई इच्छा गर्छ) यस अर्थमा पूर्ववत् क्यच्, सुप्को लुक् भयो, 'दिव्+य' भयो, यहाँ "हलि च"ले वकारान्त धातुका उपधाको भनेकोले यो दिव् मात्र धातु छैन, दिव् यो प्रातिपदिक हो । अतः दीर्घ भएन दिव्य यस्तै रह्यो, दिव्य धातुदेखि लट्, तिप्, शप्, पररूप भयो, 'दिव्यति' सिद्ध भयो ।

**समिध्यति**– समिधमात्मन इच्छति (आफूलाई समिधा इच्छा गर्छ) यस अर्थमा पूर्ववत् क्यच् प्रत्यय भएर 'समिध्यति' सिद्ध हुन्छ ।

**क्यस्येति**– हल्देखि पररहेका क्यच् र क्यङ्को लोप विकल्पले होस्, आर्धधातुकसंज्ञक प्रत्यय पर भएमा । "आदेः परस्य" लगाएर यकारको लोप हुन्छ, "अतो लोपः"ले अकारको लोप हुन्छ । त्यो लोपको स्थानिवद्भाव भएर लघूपधगुण हुँदैन ।

**समिधाञ्चकार, समिध्याञ्चकार**– लिट्को विवक्षामा समिधमात्मन इयेष यस अर्थमा "सुप आत्मनः"ले पूर्ववत् क्यच् भयो समिध्य धातु बन्यो, समिध्य धातुदेखि लिट् लकार आम् भयो, 'समिध्य+आम्+ल्', आम्लाई आर्धधातुकसंज्ञा भएपछि "यस्य हलः"लाई बाधेर "क्यस्य विभाषा"ले "आदेः परस्य" लाएर यकारको वैकल्पिक लोप भयो, "अतो लोपः"ले अकारको लोप भयो, 'समिध्+आम्+ल्' भयो । अकारको लोप स्थानिवद्भाव भएकोले लघूपधगुण भएन, 'समिधाम्+ल्', लिट्को लुक्, कृ धातुको अनुप्रयोग आदि भयो, 'समिधाञ्चकार' सिद्ध भयो । यकारको लोप नभएमा 'समिध्य्+आम्+ल्' छ यहाँ लिट्को लुक् आदि पूर्ववत् भयो, 'समिध्याञ्चकार' सिद्ध भयो । भूधातु र अस् धातुको अनुप्रयोगमा पूर्ववत् ऊह गर्नू ।

**समिधिता/समिध्यिता**– समिधमात्मन एष्टा यस अर्थमा क्यच् भयो, समिध्य धातुदेखि लुट्, तिबादि, 'समिध्य+इता' भएपछि यहाँ पनि "क्यस्य विभाषा"ले यलोप, अलोप, भएपछि गुण पाएमा अलोप स्थानिवद्भाव भएर गुण भएन, 'समिधिता' सिद्ध भयो । यलोप नभएको पक्षमा पनि अकारको लोप भयो, 'समिध्यिता' सिद्ध भयो । यस्तै प्रकारले **लृट्मा** समिधिष्यति/समिध्यिष्यति आदि । **आशीर्लिङ्मा** समिध्यात्/समिध्य्यात् आदि । **लुङ्मा** असमिधीत् । असमिध्यीत् आदि । **लृङ्मा** असमिधिष्यत् असमिध्यिष्यत् आदि दुई दुई थरी रूप हुन्छन् । **लोट्, लङ् र विधिलिङ्मा** समिध्यतु । असमिध्यत् । समिध्येत् आदि एक एक थरी रूप हुन्छन् । त्यस्तै क्यजन्त वाच्शब्दको आर्धधातुक लकारमा वैकल्पिक यलोप हुने हुनाले वाचाञ्चकार, वाच्याञ्चकार आदि दुई थरी रूप हुन्छन् । यस्तै प्रकारले क्यच् प्रत्ययान्त गिर् पुर् शब्दको आर्धधातुक लकारमा पनि गिराञ्चकार, गीर्याञ्चकार । पुराञ्चकार, पूर्याञ्चकार । गिरिता, गीर्यिता । पुरिता, पूर्यिता आदि रूपहरू ऊह गर्नू । अर्थात् गिर् पुर् शब्दमा यलोप नभएको पक्षमा "हलि च"ले दीर्घ हुन्छ । यो विशेषता छ । सार्वधातुक लकारमा एकथरी नै रूप हुन्छन् ।

---

**७२२. काम्यच्च ३।१।९॥**

उक्तविषये काम्यच् स्यात् । पुत्रमात्मन इच्छति पुत्रकाम्यति । पुत्रकाम्यिता ॥

**७२३. उपमानादाचारे ३।१।१०॥**

उपमानात्कर्मणः सुबन्तादाचारेऽर्थे क्यच् । पुत्रमिवाचरति पुत्रीयति छात्रम् । विष्णूयति द्विजम् ॥ **वा.**(सर्वप्रातिपदिकेभ्यः क्विब्वा वक्तव्यः) ।

---

**काम्यच्चेति–** क्यच्का विषयमा काम्यच् पनि होस् ।

**पुत्रकाम्यति–** पुत्रम् आत्मन इच्छति (आफूलाई छोरा इच्छा गर्छ) यो अर्थमा 'पुत्र+अम्+यस' सुबन्तदेखि "काम्यच्च"ले काम्यच् प्रत्यय भयो, धातुसंज्ञा, सुप्को लुक् भयो, पुत्रकाम्य धातु बन्यो, पुत्रकाम्यधातुदेखि लट् आदि भयो, 'पुत्रकाम्यति' सिद्ध भयो । लिट्मा पुत्रकाम्याञ्चकार आदि रूप हुन्छन् ।

**पुत्रकाम्यिता–** पुत्रमात्मन एषिता यस अर्थमा पुत्रकाम्यधातुदेखि लुट्, पूर्ववत् प्रक्रिया भएर 'पुत्रकाम्य+इता', भएपछि "अतो लोपः"ले अकारको लोप भयो, 'पुत्रकाम्यिता' सिद्ध भयो । यहाँ पुत्रकाम्यका यकारको लोप "यस्य हलः"ले हुँदैन "अर्थवद् ग्रहणे नानर्थकस्य ग्रहणम्" यो परिभाषाले निषेध गर्छ ।

**उपमानादाचार इति–** उपमानवाचक कर्मबोधक सुबन्तदेखि आचार अर्थमा क्यच् होस् । यहाँ आचार भनेको व्यवहार हो ।

"सुप आत्मन क्यच्"ले गर्ने क्यच् इच्छार्थक र यो आचारार्थक क्यच् हो । रूप यौटै भए पनि विवक्षाले अर्थ फरक हुन्छ ।

**पुत्रीयति छात्रम्–** यहाँ उपमान पुत्र हो, उपमेय छात्र हो ।

**पुत्रीयति (छात्रम्)–** छात्रं पुत्रमिव आचरति (छात्रलाई छोरालाई जस्तै व्यवहार गर्छ) यस अर्थमा उपमान वाचक कर्मबोधक सुबन्त 'पुत्र+अम्' यसदेखि "उपमानादाचारे"ले क्यच् भयो, धातुसंज्ञा, सुप्को लुक्, अवर्णको ईत्व भएर पुत्रीय धातु बन्यो, लट् आदि भयो, 'पुत्रीयति' सिद्ध भयो ।

**विष्णूयति द्विजम्–** यहाँ उपमान विष्णु र उपमेय ब्राह्मण हुन् ।

**विष्णूयति–**(द्विजम्) द्विजं विष्णुमिव आचरति (ब्राह्मणलाई विष्णुलाई जस्तै व्यवहार गर्छ, मान्छ) भन्दा 'विष्णु+अम्' यस सुबन्तदेखि आचार अर्थमा क्यच् भयो, धातुसंज्ञा, सुप्को लुक् भयो, 'विष्णु+य' भयो। "अकृत्सार्वधातुकयोः०"ले विष्णुका उकारको दीर्घ भयो, विष्णूयधातु भयो, विष्णूयधातुदेखि लट् आदि भयो, 'विष्णूयति' सिद्ध भयो ।

**सर्वेति–** सम्पूर्ण प्रातिपदिकदेखि आचार अर्थमा क्विप् विकल्पले होस् भन्नु । यो क्विप् प्रत्यय [११२] असुबन्त प्रातिपदिकदेखि हुन्छ ।

क्विप्को सर्वापहारी लोप हुन्छ । अर्थात् ककारको "लशक्वतद्धिते"ले पकारको, "हलन्त्यम्"ले इत्संज्ञा हुन्छ । इकारको "उपदेशेऽजनु०"ले इत्संज्ञा हुन्छ र "तस्य लोपः"ले लोप हुन्छ । (उच्चारणार्थ मानेमा स्वतः लोप हुन्छ) बाँकी व् रहन्छ । वकारको 'वेरपृक्तस्य'ले लोप हुन्छ । यो कुरा क्विन् प्रत्ययको प्रकरणमा पनि भनिएको छ । प्रत्ययको यसरी सर्वापहारी लोप भएपछि प्रातिपदिक मात्र बाँकी रहन्छ र "सनाद्यन्ता धातवः"ले धातुसंज्ञा हुन्छ र त्यसदेखि लट् आदि लकार हुन्छन् ।

---

११२ "प्रातिपदिकग्रहणादिह सुप इति न सम्बध्यते तेन पदकार्यं न" । इति सिद्धान्तकौमुद्याम् ।

"अतो गुणे"। कृष्ण इवाचरति कृष्णति। स्व इवाचरति स्वति। सस्वौ॥

**७२४. अनुनासिकस्य क्विझलोः क्ङिति ६।४।१५॥**

अनुनासिकान्तस्योपधाया दीर्घः स्यात्क्वौ झलादौ च क्ङिति। इदमिवाचरति इदामति। राजेव राजानति। पन्था इव पथीनति॥

**७२५. कष्टाय क्रमणे ३।१।१४॥**

चतुर्थ्यन्तात्कष्टशब्दादुत्साहेऽर्थे क्यङ् स्यात्। कष्टाय क्रमते कष्टायते।

---

**अत इति**– "अतो गुणे"ले पररूप हुन्छ।

**कृष्णति**– कृष्ण इव आचरति (कृष्णले जस्तै व्यवहार गर्छ) यस अर्थमा कृष्ण शब्ददेखि "सर्वप्रातिपदिकेभ्यः०" वार्तिकले क्विप् प्रत्यय भयो, माथि लेखिएको प्रकारले क्विप्को सर्वापहारी लोप भयो, कृष्ण बाँकी रह्यो, यसलाई "सनाद्यन्ताः"ले धातुसंज्ञा भयो, कृष्ण धातुदेखि लट् परस्मैपद प्रथमपुरुष एकवचन तिप्, शप्प्रत्यय, "अतो गुणे"ले पररूप भयो, 'कृष्णति' सिद्ध भयो। यस्तै प्रकारले 'कृष्णाञ्चकार' आदि रूप पनि जान्नू।

**स्वति**– स्व इव आचरति (आफूले जस्तै आचरण गर्छ) भन्दा स्व शब्ददेखि क्विप् प्रत्यय, सर्वापहारीलोप, धातुसंज्ञा, लट्, तिप् आदि भयो, 'स्वति' सिद्ध भयो

**सस्वौ**– पूर्ववत् बनेको स्व धातुदेखि लिट्मा स्व यो अनेकाच् नहुनाले "कास्यनेकाच०"ले आम् भएन। स्व धातुदेखि लिट्, तिप्, णल्, वृद्धि, 'स्वा+अ', "आत औ णलः"ले औकारादेश, द्वित्वादि भयो, 'सस्वौ' सिद्ध भयो।

**सस्वतुः, सस्वुः**– अतुस्मा पररूप हुन्छ। उस्मा पनि "उस्यपदान्तात्"ले पररूप हुन्छ। थल्मा र व, म,मा नित्य इट् हुन्छ, "एकाच उपदेशे०" लाग्दैन। कसै कसैले स्व धातु प्रत्ययान्त हुनाले आम् हुन्छ भनेका छन् तर वार्तिककारले "कास्प्रत्ययादाममन्त्रे लिटि" यो सूत्र "कास्यनेकाच आममन्त्रे लिटि" यसरी पढ्नुपर्छ (कास्यनेकाच आम् वक्तव्यः) भनेका छन्। यहाँ स्व अनेकाच् छैन र आम् हुँदैन।

**अनुनासिकस्येति**– अनुनासिकान्त उपधाका स्थानमा दीर्घ आदेश होस्, क्वि प्रत्यय पर भएमा र झल् आदिमा हुने कित् ङित् प्रत्यय पर भएमा पनि।

**इदामति**– इदम् इव आचरति (यसले जस्तै आचरण गर्छ) यस अर्थमा इदम् शब्ददेखि "सर्वप्रातिपदिकेभ्यः०"ले क्विप् भयो, क्विप् पर भएमा "अनुनासिकस्य क्विझलोः०"ले उपधाको दीर्घ भयो, क्विप् प्रत्ययको सर्वापहारी लोप भयो, इदाम् बाँकी रह्यो, यसलाई धातुसंज्ञा भयो, इदाम् धातुदेखि लट्, तिप्, शप् भयो, 'इदामति' सिद्ध भयो।

**राजानति**– राजा इव आचरति (राजाले जस्तै आचरण गर्छ), भन्दा राजन् शब्ददेखि क्विप् उपधादीर्घ क्विप्को सर्वापहारी लोप भएर राजान् धातु भयो, राजान्धातुदेखि लट् आदि भयो, 'राजानति' सिद्ध भयो।

**पथीनति**– पन्था इव आचरति (बाटोले झैं आचरण गर्दछ) यस अर्थमा पथिन् शब्ददेखि क्विप्, उपधादीर्घ, क्विप्को सर्वापहारी लोप भएर पथिन् बाँकी रह्यो, यसलाई धातुसंज्ञा भएपछि यसदेखि लट्, तिप्, शप् भयो, 'पथीनति' सिद्ध भयो।

यहाँ सु विभक्ति न राखीकन नै क्विप् गरिने हुँदा "थो न्थः"ले न्थ आदेश हुन्न।

**कष्टायेति**– चतुर्थ्यन्त कष्ट शब्ददेखि उत्साह अर्थमा क्यङ् प्रत्यय होस्। यहाँ क्रमण शब्दको उत्साह अर्थ हो, कष्टशब्दको पाप अर्थ हो। यही कुरा बुझाउन यहाँ 'कष्टायते'को अर्थ 'पापं कर्तुमुत्सहते' दिएको छ।

**कष्टायते**– कष्टाय क्रमते (पाप गर्न उत्साह गर्छ), यो अर्थ बुझिँदामा चतुर्थ्यन्त कष्ट

पापं कर्तुमुत्सहते इत्यर्थः ॥

**७२६. शब्दवैरकलहाभ्रकण्वमेघेभ्यः करणे ३।१।१७॥**

एभ्यः कर्मभ्यः करोत्यर्थे क्यङ् स्यात् । शब्दं करोति शब्दायते ॥ **ग.सू.** (तत्करोति तदाचष्टे;) इति णिच् ॥ **ग.सू.** (प्रातिपदिकाद्धात्वर्थे बहुलमिष्ठवच्च ।) प्रातिपदिकाद्धात्वर्थे णिच् स्यात्, इष्ठे यथा प्रातिपदिकस्य पुंवद्भावरभावटिलोपविन्मतुब्लोपयणादिलोपप्रस्थस्फाद्यादेशभसंज्ञास्तद्वण्णावपि स्युः । इत्यल्लोपः । घटं करोत्याचष्टे वा घटयति ॥

## इति नामधातवः ॥

---

शब्द 'कष्ट+ङे' यसदेखि "कष्टाय क्रमणे"ले क्यङ् प्रत्यय भयो, 'कष्ट+ङे+य'लाई यङन्तत्वात् "सनाद्यन्ताः०"ले धातुसंज्ञा र सुप्को लुक् भएपछि 'कष्ट+य', यहाँ "अकृत्सार्वधातुकयोः०" ले दीर्घ भयो, 'कष्टाय' भयो, कष्टाय धातुदेखि लट्, ङित्वाद्, आत्मनेपद त, एत्व, शप्, पररूप भयो, 'कष्टायते' सिद्ध भयो ।

**शब्देति**– कर्मबोधक शब्द, वैर, कलह, अभ्र, कण्व, मेघ यी शब्ददेखि करोति (गर्छ), भन्ने अर्थमा क्यङ्प्रत्यय होस् ।

**शब्दायते**– शब्दं करोति (शब्द गर्छ), यस अर्थमा 'शब्द+अम्' यसदेखि "शब्दवैरकलहा०" यो सूत्रले क्यङ् भयो, 'शब्द+अम्+य' भयो, 'शब्द+अम्+य', यसलाई "सनाद्यन्ता धातवः"ले धातुसंज्ञा भएपछि "सुपो धातु०"ले अम्को लुक् भयो, "अकृत्सार्वधातुकयोः०"ले शब्दका अकारको दीर्घ भएर आकार भयो, शब्दाय धातु भयो, शब्दाय धातुदेखि लट्, ङित्वात्, आत्मनेपद भयो, एत्व, शप्, पररूप, भयो, 'शब्दायते' सिद्ध भयो । यस्तै प्रकारले वैरं करोति (वैरभाव गर्छ) यस अर्थमा 'वैरायते' । कलहं करोति (कलह गर्छ), भन्दा 'कलहायते' । अभ्रं करोति (बादल गराउँछ) यस अर्थमा 'अभ्रायते' । कण्वं (पापम्) करोति (पाप गर्छ) यस अर्थमा 'कण्वायते' । मेघं करोति (बादल गराउँछ) भन्दा 'मेघायते' यी रूप सिद्ध हुन्छन् ।

**(ग.सू.) तत्करोतीति**– द्वितीयान्त समर्थदेखि 'करोति' यस अर्थमा द्वितीयान्त समर्थदेखि 'आचष्टे' यस अर्थमा णिच् हुन्छ ।

**(ग.सू.)**– प्रातिपदिकदेखि धातुको अर्थ 'करोति' वा 'आचष्टे' यस अर्थमा बहुलप्रकारले णिच् होस् इष्ठवद्भाव पनि होस् ।

**इष्ठे यथेति**– इष्ठवद्भाव भनेको इष्ठन्प्रत्यय पर भएमा जस्तै प्रातिपदिकको पुंवद्भाव, रभाव, टिलोप, विन् प्रत्यय र मतुप् प्रत्ययको लोप, यणादिलोप, प्र, स्थ, स्फ आदि आदेश र भसंज्ञा हुन्छन्, त्यस्तै णि पर भएमा पनि होऊन् । भसंज्ञा भएको हुनाले "यस्येति च"ले अकारको लोप हुन्छ । यहाँ "अतो लोपः"ले णिपर भएमा अकार लोप पाउँदैन, किनकि शब्ददेखि गरेको णिच् आर्धधातुक हुँदैन । आर्धधातुकसंज्ञा गर्ने सूत्रले "धातोरिति विहितः प्रत्ययः" (धातुदेखि विधान गरिएको प्रत्यय) भन्छ ।

**घटयति**– घटं करोति आचष्टे वा (घडा बनाउँछ अथवा घडा भन्छ), यस अर्थमा 'घट+अम्' यसदेखि "प्रातिपदिकाद्धात्वर्थे"ले णिच् भयो, णिजन्त धातु भएपछि अम्को लुक् भयो, 'घट+इ', यहाँ इष्ठवद्भाव भएर भसंज्ञा भयो, तब घटका अकारको "यस्येति च"ले लोप भयो, 'घटि' भयो । घटि यो णिजन्तत्वाद् धातुसंज्ञक छँदैछ, घटि धातुदेखि लट्, तिप्, शप्,

## अथ कण्ड्वादिप्रक्रिया

७२७. **कण्ड्वादिभ्यो यक्** ३।१।२७।।

एभ्यो धातुभ्यो नित्यं यक् स्यात्स्वार्थे । **कण्डूञ्** गात्रविघर्षणे ।।१।। कण्डूयति ।। कण्डूयते इत्यादि ।।

**इति कण्ड्वादिप्रक्रिया** ।।

---

पररूप भयो, 'घटयति' सिद्ध भयो । यस्तै प्रकारले लिट् आदि लकारमा घटयाञ्चकार । अजघटत् आदि रूप जान्नू ।

यहाँ माधवीय धातुवृत्तिकारले "सुबन्तदेखि हैन, केवल प्रातिपदिकदेखि णिच् हुन्छ । सुबन्तदेखि णि गरेमा पटुमाचष्टे यहाँ टिलोप हुन्छ र णि गरेपछि त्यसको स्थानिवद्भाव निषेध भएपछि पदत्त्वात् जश्त्व हुन्छ र पडयति यस्तो अनिष्ट रूप हुन्छ" भनेका छन् । तर यहाँ इष्ठवद् भाव भएपछि भसंज्ञा नै हुन्छ । पदसंज्ञा हुँदैन, स्पष्ट नै छ । अतः सुबन्तदेखि नै णिच् हुन्छ ।

**नामधातु प्रकरण सकियो ।**

---------------

**अब कण्ड्वादिप्रकरण शुरू हुन्छ ।**

**कण्ड्वादीति**- कण्ड्वादि धातुदेखि नित्य, यक् प्रत्यय होस् स्वार्थमा ।

**कण्डूञ्** धातु कन्याउनु अर्थमा छ । ञकारको इत्संज्ञा, लोप हुन्छ । यो धातु उभयपदी, सेट्, सकर्मक हो । कण्डू धातुदेखि स्वार्थमा यक् प्रत्यय भयो, 'कण्डूय' भयो, यगन्तत्वात् कण्डूयलाई धातुसंज्ञा, कण्डूय धातुदेखि लट्, परस्मैपद, तिप् आदि भयो, 'कण्डूयति' सिद्ध भयो । आत्मनेपद भएमा त, एत्व, शप् आदि भयो, 'कण्डूयते' सिद्ध भयो । यस्तै प्रकारले **लिट्मा** कण्डूयाञ्चकार/चक्रे । **लुट्मा** कण्डूयितासि/से आदि रूप हुन्छन् । अरू लकारका रूपहरू पनि पूर्ववत् ऊह गर्नू ।

**कण्ड्वादिप्रकरण सकियो ।**

---------------

## अथात्मनेपदप्रक्रिया

**७२८. कर्तरि कर्मव्यतिहारे १।३।१४॥**

क्रियाविनिमये द्योत्ये कर्तर्यात्मनेपदम्। व्यतिलुनीते। अन्यस्य योग्यं लवनं करोतीत्यर्थः॥

**७२९. न गतिहिंसार्थेभ्यः १।३।१५॥**

व्यतिगच्छन्ति। व्यतिघ्नन्ति॥

---

**अब आत्मनेपद प्रक्रिया शुरू हुन्छ।**

कुन कुन धातुदेखि आत्मनेपद हुन्छ भन्ने बारे सामान्यनियम तिङन्त प्रकरणको आरम्भमा दिइसकेको कुरा ज्ञात नै छ। विशेष नियम यहाँ दिइन्छ। विशेष नियममा उपसर्गको योग, अर्थभिन्नता आदि कारण छन्, जो ती सूत्रमा उल्लिखित छन्। उभयपदी धातुदेखि क्रियाको फल कर्तामा नगएमा पनि आत्मनेपद हुन्छ। परस्मैपदी धातुबाट ती ती उपसर्गको योगमा र त्यो अर्थ बुझिएमा आत्मनेपद हुन्छ। आत्मनेपद अथवा परस्मैपद लकारका स्थानमा हुन्छन्। 'कर्तरि'को अधिकार हुनाले जुनसुकै धातुदेखि पनि आत्मनेपद होस्, परस्मैपद होस् भन्दा त्यो धातुदेखि कर्ता अर्थमा विधान गरिएका लकारका स्थानमा भन्ने अर्थ सर्वत्र सम्झनु पर्छ। यो आत्मनेपद प्रक्रिया र परस्मैपद प्रक्रियामा धातुदेखि आत्मनेपद र परस्मैपद के हुन्छ त्यति मात्र बुझाउन लट् लकार प्रथम पुरुष एकवचनको रूप मात्र दिइएको छ। लट् लकारका अरू रूप र अरू लकारका सबै रूप आफै ऊह गरेर बनाउनु पर्छ।

**कर्तरि इति**– क्रिया विनिमय द्योत्य भएमा जुनसुकै धातुदेखि पनि कर्ता अर्थमा (विधान गरिएका लकारका स्थानमा) आत्मनेपद होस्। जुनसुकै धातुमा पनि 'वि+अति' (व्यति) उपसर्ग लागेपछि क्रियाविनिमय बुझिन्छ। क्रियाविनिमय भनेको क्रियाको उल्टापाल्टा हो अर्थात् यौटाले गर्ने काम अर्काले गर्नु हो।

**व्यतिलुनीते**– व्यति उपसर्ग पूर्वमा हुने लूधातुदेखि क्रियाको विनिमय बुझिएकोले यहाँ "कर्तरि कर्मव्यतिहारे" यो सूत्रले क्रियाको फल कर्तामा नगएमा पनि आत्मनेपद भयो र उक्त रूप सिद्ध भयो। लूञ् धातु उभयपदी हो। अतः क्रियाको फल कर्तामा गएमा "स्वरितञितः०"ले आत्मनेपद स्वतः हुन्छ।

**अन्यस्येति**– व्यतिलुनीतेको अर्थ अन्यस्य योग्यं लवन करोति (अर्काको योग्य काट्ने काम गर्छ) हो।

**न गतीति**– गत्यर्थक र हिंसार्थक धातुदेखि क्रियाविनिमय अर्थमा आत्मनेपद नहोस्।

**व्यतिगच्छन्ति**- अन्यस्य योग्यं गमनमन्ये कुर्वन्ति (अरूको योग्य हिंड्ने काम अरूले गर्छन्) यस अर्थमा व्यति उपसर्गपूर्वक गम् धातुदेखि कर्ता अर्थमा विधान गरिएको लट्लकारका स्थानमा "कर्तरि कर्मव्यतिहारे"ले आत्मनेपद पाएको "न गतिहिंसार्थेभ्यः"ले यो गम् धातु गत्यर्थक हुनाले निषेध भयो, लकारका स्थानमा "शेषात्कर्तरि०"ले परस्मैपद भयो, 'व्यतिगच्छन्ति' सिद्ध भयो।

**व्यतिघ्नन्ति**– अन्यस्य योग्यं हननमन्ये कुर्वन्ति (अरूको योग्य मार्ने काम अरूले गर्छन्), यो अर्थ बुझिँदामा व्यति उपसर्गपूर्वक हन् धातुदेखि कर्ता अर्थमा विधान गरिएको लट्लकारका स्थानमा

**७३०. नेर्विशः १।३।१८॥**

निविशते ॥

**७३१. परिव्यवेभ्यः क्रियः १।३।१८॥**

परिक्रीणीते । विक्रीणीते । अवक्रीणीते ॥

**७३२. विपराभ्यां जेः १।३।१९॥**

विजयते । पराजयते ॥

**७३३. समवप्रविभ्यः स्थः १।३।२२॥**

संतिष्ठते । अवतिष्ठते । प्रतिष्ठते । वितिष्ठते ॥

---

"कर्तरि कर्मव्यतिहारे"ले आत्मनेपद पाएको "न गतहिंसार्थेभ्यः"ले हिंसा अर्थक धातु हुनाले निषेध भयो, लकारका स्थानमा "शेषात्कर्तरि परस्मैपदम्०"ले परस्मैपद भयो, 'व्यतिघ्नन्ति' सिद्ध भयो ।

यस्तै प्रकारले अन्यस्य योग्यं गमनमन्ये चक्रुः (अरूको योग्य हिंड्ने काम अरूले गरे) यस अर्थमा 'व्यतिजग्मुः' यो रूप र अन्यस्य योग्यं हननमन्ये चक्रुः (अरूको योग्य मार्ने काम अरूले गरे) यस अर्थमा 'व्यतिजघ्नुः' आदि रूपहरूको ऊह गर्नू । "कर्मव्यतिहारे" यसको अनुवृत्ति निवृत्त भयो ।

**नेरिति**– नि उपसर्ग पूर्वमा हुने विश् धातुदेखि आत्मनेपद होस् । विश्धातु परस्मैपदी हो तर नि उपसर्ग पूर्वमा भएमा "नेर्विशः" यो सूत्रले आत्मनेपद हुन्छ ।

**निविशते**– नि उपसर्ग पूर्वक विश् धातुदेखि "नेर्विशः" यो सूत्रले आत्मनेपद भयो, 'निविशते' सिद्ध भयो ।

**परीति**– परि उपसर्ग, वि उपसर्ग, अव उपसर्ग पूर्वमा पनि क्री धातुदेखि क्रियाको फल कर्तामा नगए पनि आत्मनेपद होस् ।

**क्री** धातु ञित्वात् उभयपदी हो, क्रियाफल कर्तामा जाँदा आत्मनेपद स्वतः सिद्ध छ । क्रियाको फल कर्तामा नगएमा यसले आत्मनेपद हुन्छ ।

**परिक्रीणीते, विक्रीणीते, अवक्रीणीते**– परि उपसर्गपूर्वक क्री धातुदेखि क्रियाको फल कर्तामा नगएमा पनि "परिव्यवेभ्यः०"ले आत्मनेपद भयो, 'परिक्रीणीते' सिद्ध भयो । त्यस्तै वि र अव उपसर्ग पूर्वमा हुने क्रीधातुदेखि पनि आत्मनेपद भयो, 'विक्रीणीते', 'अवक्रीणीते' सिद्ध भयो ।

**विपराभ्यामिति**– विउपसर्ग र पराउपसर्ग पूर्वमा हुने जि धातुदेखि आत्मनेपद होस् ।

**जिधातु** परस्मैपदी हो, विउपसर्ग र पराउपसर्गको योगमा यो सूत्रले आत्मनेपद हुन्छ ।

**विजयते, पराजयते**- वि उपसर्गको योगमा जि धातुदेखि आत्मनेपद त, एत्व, शप्, पररूप भयो, 'विजयते' सिद्ध भयो । परा उपसर्ग पूर्वमा हुने जि धातुदेखि आत्मनेपद भयो, 'पराजयते' सिद्ध भयो ।

विजयते (जित्छ, सर्वोत्कृष्ट भएर रहन्छ ।) यो जि धातु जित्नु अर्थमा सकर्मक, सर्वोत्कृष्ट भएर रहनु अर्थमा अकर्मक छ ।

पराजयते (हार्छ, हराउँछ), त्यस्तै हार्नु अर्थमा अकर्मक, हराउनु अर्थमा सकर्मक छ ।

**समवेति**– सम्, अव, प्र., वि, उपसर्गदेखि पर रहेका स्थाधातुदेखि आत्मनेपद होस् । स्थाधातु परस्मैपदी हो । यी उपसर्गको योगमा आत्मनेपद हुन्छ परस्मैपद हुँदैन ।

**सन्तिष्ठते, अवतिष्ठते, प्रतिष्ठते, वितिष्ठते**- सम् उपसर्ग पूर्वमा हुने स्था धातुदेखि "समव प्रविभ्यःस्थः"ले आत्मनेपद भयो, शप् प्रत्यय भएपछि स्थाका स्थानमा "पाघ्राध्मा०"ले तिष्ठ आदेश भयो, पररूप भयो, 'सन्तिष्ठते' सिद्ध भयो । यस्तै प्रकारले अव, प्र, विउपसर्ग पूर्वमा हुने

**७३४. अपह्नवे ज्ञः १।३।४४॥**
शतमपजानीते । अपलपतीत्यर्थः ॥
**७३५. अकर्मकाच्च १।३।४५॥**
सर्पिषो जानीते । सर्पिषोपायेन प्रवर्तत इत्यर्थः ॥
**७३६. उदश्चरः सकर्मकात् १।३।५३॥**
धर्ममुच्चरते । उल्लङ्घ्य गच्छतीत्यर्थः ॥

---

स्था धातुदेखि पनि आत्मनेपद भयो, शप् भएपछि तिष्ठ आदेश भयो, 'अवतिष्ठते', 'प्रतिष्ठते', 'वितिष्ठते' यी रूप सिद्ध भए ।

सन्तिष्ठते (राम्रोसँग रहन्छ) अवतिष्ठते (अवस्थित हुन्छ) प्रतिष्ठते (प्रस्थान गर्छ)
वितिष्ठते (विस्थापित हुन्छ)

प्र उपसर्ग पूर्वमा हुने स्थाधातु विशेष प्रयोगमा आउने हुनाले त्यसका अरू लकारका पनि एक एक रूप तल दिइन्छ ।

**लिट्मा** प्रतस्थे आदि । **लुट्मा** प्रस्थाता आदि । **लृट्मा** प्रस्थास्यते आदि । **लोट्मा** प्रतिष्ठताम् आदि । **लङ्मा** प्रातिष्ठत आदि । **विधिलिङ्मा** प्रतिष्ठेत आदि । **आशीर्लिङ्मा** प्रस्थासीष्ट आदि । **लुङ्मा** प्रास्थित आदि । **लृङ्मा** प्रास्थास्यत आदि रूप हुन्छन् ।

लुङ्मा "स्थाघ्वोरिच्च"ले आकारका स्थानमा इकार हुन्छ । त र थास्मा झल् पर हुनाले "ह्रस्वादङ्गात्"ले सिच्को लोप हुन्छ । अरू उपसर्गको योगमा पनि यो कुरा स्मरण गर्नू ।

**अपह्नवे इति-** ज्ञा धातुदेखि विहित लकारका स्थानमा आत्मनेपद होस् ढाँट्नु अर्थमा ।

**अपजानीते-** अप उपसर्गपूर्वक ज्ञा धातुदेखि विधान गरिएको लट्का स्थानमा "अपह्नवे ज्ञः"ले आत्मनेपद त, श्नाप्रत्यय, "ज्ञाजनोर्जा"ले जाआदेश नाका आकारको ईत्व भयो, 'अपजानीते' सिद्ध भयो । उदाहरण- शतमपजानीते (सय रूपैयाँ ढाँट्छ ।)

**अकर्मकाच्चेति-** अकर्मक ज्ञा धातुदेखि विहित लकारका स्थानमा आत्मनेपद होस् । ज्ञा धातु जान्नु अर्थमा सकर्मक नै हुन्छ । प्रवृत्त हुनु अर्थमा अकर्मक हुन्छ ।

'सर्पिषो जानीते' यस वाक्यमा 'सर्पिषः' यहाँ जो षष्ठी छ त्यो तृतीयाको अर्थमा भएको षष्ठी हो । अर्थात् "ज्ञोऽविदर्थस्य करणे" यो सूत्रले करण अर्थमा षष्ठी भएको हो । अतः 'सर्पिषः'को अर्थ सर्पिषा-घृतेन अर्थात् उपायभूतेन हो र 'जानीते'को अर्थ 'प्रवर्तते' हो । यही कुरा सर्पिषोपायेन प्रवर्तते (घीउद्वारा प्रवृत्त हुन्छ) भनेर खुलाएको छ । अझ स्पष्ट गर्ने हो भने यसो भन्नुपर्छ– सर्पिषः शुक्रं जानीते (घीउद्वारा वीर्य प्रवृत्त हुन्छ ।)

'उपायभूतेन' भनेर यहाँ 'सर्पिषः', षष्ठयन्तको करण अर्थ प्रकट गरेको छ ।

**सर्पिषो जानीते–** यहाँ प्रवृत्त हुनु ज्ञा धातुको अर्थ छ र ज्ञा धातु अकर्मक भयो, अतः ज्ञा धातुदेखि आत्मनेपद भयो, 'जानीते' सिद्ध भयो ।

**उदश्चर इति–** सकर्मक उद् उपसर्ग पूर्वमा हुने चर् धातुदेखि आत्मनेपद होस् । चर् धातु परस्मैपदी हो । यहाँ सकर्मक उद् उपसर्गपूर्वक चर् धातुदेखि यो सूत्रले आत्मनेपद विधान गर्दछ ।

**धर्ममुच्चरते-** धर्ममुल्लङ्घ्य गच्छति (धर्म उल्लङ्घन गरेर हिंड्छ ।), यहाँ उद् उपसर्ग पूर्वक चर् धातुको कर्म धर्म छ र सकर्मक भयो, अतः "उदश्चरः०"ले आत्मनेपद भयो, 'धर्ममुच्चरते' सिद्ध भयो ।

---

**७३७. समस्तृतीयायुक्तात् १।३।५४।।**

रथेन सञ्चरते ॥

**७३८. दाणश्च सा चेच्चतुर्थ्यर्थे १।३।५५।।**

सम्पूर्वाद्दाणस्तृतीयान्तेन युक्तादुक्तं स्यात् तृतीया चेच्चतुर्थ्यर्थे। दास्या संयच्छते कामी ॥

**७३९. पूर्ववत्सनः १।३।६२।।**

सनः पूर्वो यो धातुस्तेन तुल्यं सन्नन्तादप्यात्मनेपदं स्यात्। एदिधिषते ॥

**७४०. हलन्ताच्च १।२।१०।।**

इक्समीपाद्धलः परो झलादिः सन् कित्। निविविक्षते ॥

---

**सम इति–** तृतीयान्तले युक्त सम्उपसर्ग पूर्वमा हुने चर् धातुदेखि आत्मनेपद होस्।

**रथेन सञ्चरते–** (रथद्वारा घुम्छ।) यहाँ रथेन यो तृतीयान्तले युक्त सम् उपसर्ग पूर्वक चर् धातु छ र "समस्तृतीयायुक्तात्"ले आत्मनेपद भयो, 'रथेन सञ्चरते' सिद्ध भयो। तृतीयान्त पद युक्त छैन भने आत्मनेपद हुँदैन, 'मार्गे सञ्चरति' (बाटामा हिंड्छ), यहाँ परस्मैपद नै हुन्छ।

**दाणश्चेति–** तृतीयान्तले युक्त सम् उपसर्गपूर्वक दाण् धातुदेखि आत्मनेपद होस्, तृतीया चतुर्थीको अर्थमा छ भने।

**दाण्** दाने भौवादिक परस्मैपदी धातु हो। यसदेखि उक्त अवस्थामा आत्मनेपद हुन्छ।

"आशिष्टव्यवहारे दाणः प्रयोगे चतुर्थ्यर्थे तृतीया" यो वार्तिकले अशिष्ट व्यवहारमा दाण् धातुको प्रयोगमा चतुर्थीको अर्थमा तृतीया हुन्छ। त्यही स्थलमा दाण् धातुदेखि आत्मनेपद हुन्छ।

दास्या संयच्छते कामी (कामी पुरुष दासीलाई दिन्छ), यहाँ दास्या यो तृतीयान्तले युक्त संपूर्वक दाण् धातु छ, तृतीया चतुर्थीको अर्थमा पनि छ र सम् उपसर्गपूर्वक दाण् धातुदेखि आत्मनेपद भयो, 'दास्या संयच्छते कामी' भयो। यहाँ "पाघ्राध्मा०"यो सूत्रले दाण् धातुका स्थानमा यच्छ् आदेश हुन्छ।

यहाँ अशिष्ट व्यवहार भनेको शिष्टहरूबाट नगरिने व्यवहार हो। रतिको इच्छाले दासीलाई धन दिनु अशिष्ट व्यवहार छ र दासी शब्ददेखि "चतुर्थी संप्रदाने"ले चतुर्थी पाएमा बाधेर उक्त वार्तिकले तृतीया भएको छ।

**पूर्ववदिति–** सन्देखि पूर्ववर्ती अथवा सन्को प्रकृति जुन धातु छ त्यस धातुदेखि जस्तै सन्नन्तधातुदेखि पनि आत्मनेपद, परस्मैपद होस्।

**एदिधिषते–** एधितुम् इच्छति (बढ्न चाहन्छ) यस अर्थमा एध् धातुदेखि सन् प्रत्यय भयो, सन्को इट् आगम, षत्व भएपछि एधिषधातु भयो, अनि "सन्यङोः"ले द्वित्व हुँदा द्वितीय एकाच् धिको द्वित्व, अभ्यासकार्य भएपछि 'एदिधिष' भयो, यसलाई "सनाद्यन्ताः०"ले धातुसंज्ञा भएकै छ एदिधिष धातुदेखि विहित लट्का स्थानमा "पूर्ववत्सनः"ले आत्मनेपद भयो, 'एदिधिषते' सिद्ध भयो।

**हलन्तादिति–** इक्का नजीकमा रहेका हल्देखि पर रहेको झल् आदिमा हुने सन् कित् होस्।

**निविविक्षते–** निउपसर्ग पूर्वमा हुने विश् धातुदेखि सन् प्रत्यय भयो, "एकाच उपदेशे"ले इट् आगमको निषेध भयो, 'निविश्+स', यहाँ इक्का नजीकमा रहेको हल् (निविश्को शकार) देखि पर रहेको झल् आदिमा हुने (अर्थात् इट् नभएको) सन् हुनाले "हलन्ताच्च"ले कित् गऱ्यो, अतः उपधाको गुण भएन, द्वित्व, अभ्यासकार्य भएर 'निविविश्+स' भयो, शकारका स्थानमा "व्रश्चभ्रस्ज०"ले षकार भयो, "षढो कः सि"ले षकारका स्थानमा ककार सन्का षकारका

**७४१. गन्धनावक्षेपणसेवनसाहसिक्यप्रतियत्नप्रकथनोपयोगेषु कृञः १।३।३२॥**

गन्धनं सूचनम् । उत्कुरुते । सूचयतीत्यर्थः । अवक्षेपणं भर्त्सनम् । श्येनो वर्तिकामुदाकुरुते । भर्त्सयतीत्यर्थः । हरिमुपकुरुते । सेवत इत्यर्थः । परदारान्प्रकुरुते । तेषु सहसा प्रवर्तते । एधो दकस्योपस्कुरुते, गुणमाधत्ते । कथाः प्रकुरुते । प्रकथयतीत्यर्थः । शतं प्रकुरुते ।

---

स्थानमा षकार, ककार र षकारको संयोग भएर क्ष भयो, निविविक्ष यो सन्नन्त धातु बन्यो । यो निविविक्ष धातुमा पूर्ववर्ती अथवा प्रकृति निविश् धातु छ, निविश् धातुदेखि "नेर्विशः"ले आत्मनेपद भएको छ । अतः "पूर्ववत्सनः"ले निविविक्षधातुदेखि पनि आत्मनेपद भयो, 'निविविक्षते' सिद्ध भयो ।

**गन्धनेति–** गन्धन, अवक्षेपण, सेवन, साहसिक्य, प्रतियत्न, प्रकथन, उपयोग यी अर्थमा कृधातुदेखि आत्मनेपद होस् ।

कृञ् धातु उभयपदी हो, क्रियाको फल कर्तामा गएमा "स्वरितञितः०"ले आत्मनेपद हुन्छ । यो सूत्रले क्रियाको फल कर्तामा नगएमा पनि आत्मनेपद विधान गर्छ ।

गन्धन भनेको छुल्याइँ लगाउनु हो । अवक्षेपण भनेको तर्साउनु हो ।

सेवन सेवा गर्नु हो, स्पष्ट नै छ । साहसिक्य भनेको सहसा प्रवृत्त हुनु हो ।

साहसिक्य शब्द-सहसा वर्तते यस अर्थमा "ओजः सहोऽम्भसा वर्तते"ले सहसा शब्द देखि ठक् भएर साहसिक शब्द बन्दछ । साहसिकस्य भावः यस अर्थमा साहसिक शब्ददेखि ष्यञ् प्रत्यय भएर साहसिक्य शब्द बन्दछ ।

प्रतियत्न भनेको यौटाको गुण अर्कोले लिनु हो ।

प्रकथन भनेको प्रकट रूपमा कथन गर्नु (व्याख्यान गर्नु) हो ।

उपयोग भनेको काममा प्रयोग गर्नु हो अर्थ स्पष्टै छ ।

क्रमशः यी अर्थमा कृ धातुदेखि आत्मनेपद भएका उदाहरण तल छन् ।

**उत्कुरुते** (छुल्याइँ लगाउँछ ।) यहाँ उद् उपसर्गपूर्वक कृधातुको गन्धन (छुल्याइँ) अर्थ बुझिएकाले उद् उपसर्गपूर्वक कृ धातुदेखि आत्मनेपद भयो ।

**श्येनो वर्तिकामुदाकुरुते-** (वाजले वट्टाइलाई तर्साउँछ ।) यहाँ उद् आङ् उपसर्ग पूर्वक कृ धातुको अवक्षेपण तर्साउनु अर्थ भएकोले उक्त सूत्र "गन्धनावक्षेपण०"ले उद्आ पूर्वक कृ धातुदेखि आत्मनेपद भयो र रूप सिद्ध भयो ।

**हरिमुपकुरुते-** (हरिको सेवा गर्छ ।) यहाँ उप उपसर्ग पूर्वमा हुने कृ धातुको सेवा गर्नु अर्थ भएकोले त्यसदेखि "गन्धनावक्षेपण०"ले आत्मनेपद भयो ।

**परदारान्प्रकुरुते-** (परस्त्रीहरूमा सहसा प्रवृत्त हुन्छ ।) यहाँ प्र उपसर्गपूर्वक कृञ् धातुको साहसिक्य-सहसाप्रवृत्त हुनु अर्थ बुझिएकोले प्र उपसर्गपूर्वक कृ धातुदेखि उक्त सूत्रले आत्मनेपद भयो ।

**एधो दकस्योपस्कुरुते-** (दाउराले पानीको गुण लिन्छ ।) यहाँ उप उपसर्गपूर्वमा हुने कृ धातुको प्रतियत्न-गुणाधान अर्थात् यौटाको गुण अर्कोले लिने अर्थ बुझिएकोले उप उपसर्ग पूर्वमा हुने कृ धातुदेखि आत्मनेपद भयो, सुट् भएर 'उपस्कुरुते' सिद्ध भयो । दाउराले पानीको गुण कसरी लिन्छ भने पानीमा दाउरो चिसो हुन्छ । चिसो पानीको गुण हो त्यो गुण दाउराले लियो ।

**कथाः प्रकुरुते** (कथा भन्छ ।) यहाँ प्र उपसर्ग पूर्वमा हुने कृ धातुको प्रकृष्टकथन (व्याख्यान) अर्थ बुझिएकोले प्र उपसर्ग पूर्वमा हुने कृ धातुदेखि उक्त सूत्रले आत्मनेपद भयो ।

**शतं प्रकुरुते** (सय रूपैयाँ उपयोग गर्छ । यहाँ प्र उपसर्ग पूर्वमा हुने कृ धातुको उपयोग गर्नु अर्थ बुझियो र प्र उपसर्ग पूर्वमा हुने कृ धातुदेखि प्रकृत सूत्रले आत्मनेपद भयो ।

धर्मार्थं विनियुङ्क्ते । एषु किम् ? कटं करोति ॥

( सू.नं. ६७२ "भुजोऽनवने" १।३।६६।।) ओदनं भुङ्क्ते । अनवने किम् ? महीं भुनक्ति ।

इत्यात्मनेपदप्रक्रिया ॥

## अथ परस्मैपदप्रक्रिया

**७४२. अनुपराभ्यां कृञः १।३।७९।।**

कर्तृगे च फले गन्धनादौ च परस्मैपदं स्यात् । अनुकरोति । पराकरोति ॥

---

**धर्मार्थमिति-** यहाँ (प्रकुरुते) उपयोग गर्छ भनेको धर्मका निमित्त लगाउँछ भनेको हो ।

**एषु किमिति-** यी गन्धन आदि अर्थमा नै कृ धातुदेखि आत्मनेपद होस् किन भन्नु ? भन्ने हो भने 'कटं करोति' (गुन्द्री बुन्छ ।) यहाँ आत्मनेपद होला । सो नहोस् भनेर गन्धनादि अर्थमा भनियो, यसो भनेपछि यहाँ उक्त गन्धन आदि कुनै पनि अर्थ नबुझिएकोले आत्मनेपद भएन ।

**भुज इति-** "भुजोऽनवने" सूत्र माथि नै गएको छ त्यसले पालन बाहेक अरू अर्थ बुझिँदामा भुज् धातुदेखि आत्मनेपद हुन्छ । ओदनं भुङ्क्ते (भात खान्छ ।) यहाँ पालनभिन्न अर्थ बुझिएकोले भुज् धातुदेखि आत्मनेपद भयो ।

**अनवने किम्-** "भुजोऽनवने" यो सूत्रमा 'अनवने' (पालन भिंन्न अर्थमा) किन भन्नु ? नभन्ने हो भने 'महीं भुनक्ति' (पृथ्वीपालन गर्छ), यहाँ पनि भुज् धातुदेखि आत्मनेपद होला, सो नहोस् भनेर अनवने (पालन भिन्न अर्थमा) भनिएको हो, अतः 'महीं भुनक्ति' यहाँ पालन अर्थ नै छ र आत्मनेपद भएन ।

**आत्मनेपदप्रक्रिया सकियो ।**

---------------------

**अब परस्मैपदप्रक्रिया शुरू हुन्छ-**

यहाँ पनि धातुदेखि परस्मैपद हुने विशेष नियम बताइन्छ । उभयपदी धातुदेखि उपसर्ग योग अथवा अर्थको कारणले परस्मैपद हुँदा क्रियाको फल कर्तामा गएमा पनि आत्मनेपद हुन्छ । केवल आत्मनेपदी धातुदेखि परस्मैपद गर्दा क्रियाको फल कर्तामा जाने नजाने भन्ने प्रश्न भएन, ती ती उपसर्गको योग अथवा त्यो त्यो अर्थको कारणले परस्मैपद हुन्छ । फलानो धातुदेखि परस्मैपद होस् मात्र भनिएको भए पनि सवत्र कर्ता अर्थमा विधान गरिएको लकारका स्थानमा भन्ने बुझ्नु पर्दछ ।

**अन्विति-** अनु उपसर्ग र परा उपसर्ग पूर्वमा हुने कृञ् धातुदेखि क्रियाको फल कर्तामा गएमा र गन्धनादि अर्थ बुझिँदामा पनि परस्मैपद होस् ।

क्रियाको फल कर्तामा गएमा "स्वरितञितः०"ले र गन्धन आदि अर्थमा "गन्धनावक्षेपण०"ले आत्मनेपद पाएकोमा बाधेर यो सूत्रले परस्मैपद हुन्छ ।

**अनुकरोति, पराकरोति-**यहाँ अनुउपसर्ग र परा उपसर्ग पूर्वक कृ धातु अनुकृ, 'पराकृ' देखि क्रियाको फल कर्तामा गएमा र गन्धनादि अर्थमा आत्मनेपद पाएकोमा त्यसलाई बाधेर "अनुपराभ्यां कृञः"ले परस्मैपद भयो । अनु र परा उपसर्ग पूर्वक कृ धातुदेखि आत्मनेपद सर्वथा अशुद्ध हुन्छ ।

**७४३. अभिप्रत्यतिभ्यः क्षिपः १।३।८०।।**
"क्षिप" प्रेरणे । स्वरितेत् । अभिक्षिपति ॥
**७४४. प्राद्वहः १।३।८१।।** प्रवहति ॥
**७४५. परेर्मृषः १।३।८२।।** परिमृष्यति ॥
**७४६. व्याङ्परिभ्यो रमः १।३।८३।। रमु** क्रीडायाम् । विरमति ॥
**७४७. उपाच्च १।३।८४।।**
यज्ञदत्तमुपरमति । उपरमयतीत्यर्थः । अन्तर्भावितण्यर्थोऽयम् ॥

**इति परस्मैपदप्रक्रिया ।**

**इति पदव्यवस्था ॥**

---

**अभिप्रतीति–** अभि, प्रति र अति उपसर्गदेखि पर रहेको क्षिप् धातुदेखि आत्मनेपद होस् । क्षिप धातु फ्याँक्नु अर्थमा छ । स्वरितेत्, तुदादिको उभयपदी धातु हो । (अनिट् सकर्मक) यी उपसर्गको योगमा यो धातु देखि क्रियाको फल कर्तामा गएमा पनि परस्मैपद हुन्छ । आत्मनेपद सर्वथा हुँदैन ।

**अभिक्षिपति–** यहाँ अभि उपसर्गपूर्वमा हुने अथवा अभि उपसर्गदेखि पर रहेका क्षिप् धातुदेखि क्रियाको फल कर्तामा गएमा "अभिप्रत्यतिभ्यः०"ले परस्मैपद भयो, 'अभिक्षिपति' सिद्ध भयो । यस्तै प्रकारले प्रतिक्षिपति, अतिक्षिपति, यी रूप पनि बन्दछन् ।

**प्राद् वह इति–** प्र उपसर्ग पूर्वमा हुने वह् धातुदेखि परस्मैपद होस् ।

वह धातु स्वरितेत् उभयपदी हो । क्रियाको फल कर्तामा गएमा यो सूत्रले परस्मैपद हुन्छ ।

**प्रवहति–** यहाँ प्रउपसर्गपूर्वक वह् धातुदेखि क्रियाको फल कर्तामा गएमा परस्मैपद भयो ।

**परेरिति–** परि उपसर्गपूर्वक मृष् धातुदेखि परस्मैपद होस् ।

**मृष** धातु सहनु अर्थमा छ । यो दिवादिको स्वरितेत् उभयपदी धातु हो । परिउपसर्गपूर्व भएमा यस धातुदेखि क्रियाको फल कर्तामा गएमा परस्मैपद हुन्छ ।

**परिमृष्यति–** यहाँ परिपूर्वकमृष् धातुदेखि "परेर्मृषः"ले क्रियाको फल कर्तामा गएमा परस्मैपद भयो ।

**व्याङ्परीति–** वि, आङ, परि उपसर्गपूर्वमा हुने रम् धातुदेखि परस्मैपद होस् । रमु धातु खेल्नु अर्थमा छ । यो भ्वादिगणको उभयपदी धातु हो । "व्याङ्परिभ्यो रमः"ले यहाँ आत्मनेपद हुन्छ ।

**विरमति–** वि उपसर्गपूर्वक रम् धातुदेखि क्रियाको फल कर्तामा गएमा "व्याङ्परिभ्यो रमः"ले परस्मैपद भयो, 'विरमति' सिद्ध भयो । यस्तै आङ पूर्वमा भएमा 'आरमति' परिपूर्व भएमा 'परिरमति' हुन्छ ।

**उपादिति–** उप उपसर्गपूर्वक रम् धातुदेखि क्रियाको फल कर्तामा गएमा परस्मैपद होस् ।

**यज्ञदत्तमुपरपति-** (यज्ञदत्तलाई हटाउँछ ।) यहाँ उप उपसर्गपूर्वक रम् धातुदेखि "उपाच्च"ले परस्मैपद भयो, 'उपरमति' भयो । यहाँ रम्धातु ण्यन्त नभए पनि णिको अर्थ अन्तर्भाव भएको हुनाले सकर्मक छ । भ्वादि गणदेखि यहाँसम्म कर्ता अर्थमा विधान गरिएका लकारका स्थानमा हुने पदव्यवस्था हो ।

**परस्मैपद प्रक्रिया सकियो ।**

**कर्तरि पदव्यवस्था समाप्त भयो ।**

---------------------

## अथ भावकर्मप्रक्रिया

**७४८. भावकर्मणोः १।३।१३॥**

लस्यात्मनेपदम् ॥

**७४९. सार्वधातुके यक् ३।१।६७॥**

धातोर्यक् भावकर्मवाचिनि सार्वधातुके । भावः क्रिया । सा च भावार्थकलकारेणानूद्यते । युष्मदस्मद्भ्यां सामानाधिकरण्याभावात् प्रथमः पुरुषः । तिङ्वाच्यक्रियाया अद्रव्यरूपत्वेन द्वित्वाद्यप्रतीतेर्न द्विवचनादि, किं त्वेकवचनमेवोत्सर्गतः । त्वया मया अन्यैश्च भूयते ।

---

**अब भावकर्मप्रक्रिया प्रारम्भ हुन्छ ।**

अघि नै भनिएको छ, लकार सकर्मक धातुदेखि कर्तामा र कर्ममा हुन्छन् । अकर्मक धातुदेखि कर्तामा र भावमा लकार हुन्छन् । सकर्मक अकर्मक दुवै धातुका कर्ता अर्थमा लकार भएमा रूपहरूको पद व्यवस्था र सिद्धि प्रक्रिया देखाइयो । अब अकर्मक धातुदेखि भावमा र सकर्मक धातुदेखि कर्म अर्थमा लकार भएमा हुने प्रक्रिया देखाइन्छ । अतः यो भावकर्मप्रक्रिया हो । भाव र कर्म अर्थमा लकार विधान गरेका लकारका स्थानमा आत्मनेपद मात्र हुन्छ ।

**भावेति**– भाव र कर्म अर्थमा विधान गरिएका लकारका स्थानमा आत्मनेपद होस् ।

**सार्वधातुके**– भावकर्मवाचक सार्वधातुकसंज्ञक प्रत्यय पर भएमा धातुदेखि यक् प्रत्यय होस् ।

**भाव इति**– भाव भनेको क्रिया हो, त्यो क्रिया भावार्थक लकारद्वारा अनूदित हुन्छ । क्रिया भनेको धातुको अर्थ हो । क्रिया रूप धात्वर्थ धातुबाटै बुझिन्छ किन अनुवाद गर्ने त ? कालिक भेदका निमित्त [११३] लकार गर्नुपर्‍यो र लकारका स्थानमा तिङ् प्रत्यय पनि जोड्नु पर्‍यो । अर्को कुरा "अपदं न प्रयुञ्जीत" (पदसञ्ज्ञा नभएको शब्द प्रयोग नगर्नू) यो भाष्यकारको सैद्धान्तिक उक्ति छ । तिङन्त नभएसम्म पद संज्ञा हुँदैन ।

**युष्मदस्मद्भ्यामिति**– भाव अर्थात् क्रियाको युष्मद् शब्द र अस्मद् शब्दसँग सामानाधिकरण्य नहुनाले मध्यमपुरुष र उत्तमपुरुष हुँदैनन् । "शेषे प्रथमः"ले प्रथमपुरुष हुन्छ ।

**तिङ्वाच्येति**– "लिङ्गसंख्यान्वययोग्यत्वं द्रव्यत्वम्" यो सिद्धान्त अनुसार तिङ्वाच्यक्रिया द्रव्य नहुनाले क्रियामा सङ्ख्याको प्रतीति हुँदैन र द्विवचन बहुवचन हुँदैन । केवल औत्सर्गिक एकवचन मात्र हुन्छ । कर्ता अनुक्त हुनाले कर्तृवाचक पद तृतीयान्त हुन्छ । यसकारण प्रत्येक भावार्थक लकारमा एकवचन मात्र हुन्छ र लकारका स्थानमा प्रथमपुरुषको एकवचन मात्र हुन्छ ।

**त्वया मया अन्यैश्च भूयते**– (तिमीले मैले र अरूले होइन्छ) यहाँ भू धातु अकर्मक हुनाले भू धातुदेखि भाव अर्थमा "लः कर्मणि०"ले सबै लकार पाएमा वर्तमान कालमा "वर्तमाने लट्"ले लट् लकार भयो । भाववाच्यमा युष्मद शब्द र अस्मद् शब्दसँग सामानाधिकरण्य नभएकोले

---

११३ 'क्रियाभेदाय कालस्तु ।'

बभूवे ॥

**७५०. स्यसिच्सीयुट्तासिषु भावकर्मणोरुपदेशेऽज्झनग्रहदृशां वा चिण्वदिट् च ६।४।६२॥**

उपदेशे योऽच् तदन्तानां हनादीनां च चिणीवाङ्गकार्यं वा स्यात्स्यादिषु भावकर्मणोर्गम्यमानयोः, स्यादीनामिडागमश्च । चिण्वद्भावपक्षेऽयमिट् । चिण्वद्भावाद् वृद्धिः । भाविता, भविता । भाविष्यते, भविष्यते । भूयताम् । अभूयत । भाविषीष्ट, भविषीष्ट ।

---

"शेषे प्रथमः"ले प्रथमपुरुष भयो । क्रियामा द्वित्व, बहुत्वसंख्या नभएकोले द्विवचन बहुवचन भएन, स्वाभाविक एकवचन भयो, 'भू+त' भयो, तलाई "तिङ्शित्सार्वधातुकम्"ले सार्वधातुकसंज्ञा भयो, "सार्वधातुके यक्"ले यक्प्रत्यय भयो, 'भूयत' भयो, त का अकारको "टित आत्मने०"ले एत्व भयो, 'भूयते' सिद्ध भयो । यक्मा कित्व हुनाले भू का उकारका स्थानमा गुण भएन ।

'त्वया मया अन्यैश्च' यहाँ त्वया, युवाभ्याम्, युष्माभिः, मया, आवाभ्याम्, अस्माभिः, तेन ताभ्यां तैश्च भूयते हुन्छ । 'तिमी, तिमी दुई, तिमीहरू, म, हामी दुई, हामीहरू, ऊ, उनी दुई, उनीहरू सबैले होइन्छ' भन्दा 'भूयते' क्रियापद रहन्छ । अर्थात् युष्मद्, अस्मद् र शेषशब्दका एकत्व, द्वित्व, बहुत्वसंख्याविशिष्ट कर्ताको क्रिया भूयते, बभूवे आदि एकवचन मात्र हुन्छन् ।

**बभूवे–** भू धातुदेखि भाव अर्थमा लिट् लकार भयो, लकारका स्थानमा पूर्ववत् प्रथमपुरुषको एकवचन तका स्थानमा एश् भयो, द्वित्व आदि भयो, 'बभूवे' सिद्ध भयो ।

**स्यसिच्सीयुडिति–** उपदेशमा जो अच् छ, तदन्तधातु र हन्, ग्रह्, दृश्धातुको चिण्मा जस्तै अङ्गकार्य विकल्पले होस्, स्य, सिच्, सीयुट्, तासिप्रत्यय पर भएमा भाव अर्थ र कर्म अर्थ बुझिँदामा, स्य आदि प्रत्ययको इट्आगम पनि होस् ।

**चिण्वद्भावपक्ष इति–** "सन्नियोगशिष्टानां सहैव प्रवृत्तिः सहैव निवृत्तिश्च" यो परिभाषा लगाएर चिण्वद्भावपक्षमा नै इट् हुन्छ ।

"स्यसिच्सीयुट्०" यो सूत्रले चिण्वद्भाव र इट् दुई काम गर्छ, चिण्वद्भाव भएकै पक्षमा यसले इट् हुन्छ । चिण्वद्भाव नभएको पक्षमा सेट्धातु भए इट् आगम हुन्छ, अनिट् धातु भए इट् आगम हुँदैन ।

**भाविता/भविता–** भू धातुदेखि भाव अर्थमा लुट्लकार प्रथमपुरुष एकवचन त भयो, तासि प्रत्यय भयो, "स्यसिच्सीयुट्तासिषु०"ले चिण्वद्भाव, इट्आगम भयो, भूका ऊकारको "अचोञ्णिति"ले वृद्धि आव्आदेश भयो, तका स्थानमा डा,टिलोप भयो, 'भाविता' सिद्ध भयो । चिण्वद्भाव नभएको पक्षमा "आर्धधातुकस्येड्०"ले इट्आगम गुण अव् आदेश भयो, तका स्थानमा डा,टिलोप भयो, 'भविता' सिद्ध भयो ।

**भाविष्यते/भविष्यते–** भू धातुदेखि भावमा लृट्, त, स्य, चिण्वद्भाव, इट् आगम, वृद्धि, आव् आदेश भयो, 'भाविष्यते' सिद्ध भयो । चिण्वद्भाव नभएको पक्षमा "आर्धधातुकस्येड्०"ले इट्, गुण, अव् आदेश भयो, 'भविष्यते' सिद्ध भयो ।

**लोट्मा–** भूयताम्, लङ्मा अभूयत, विधिलिङ्मा, भूयते यी रूप हुन्छन् । यहाँ आत्मनेपद त, यक् प्रत्यय, विभक्तिकार्य, यी तीन कुरा याद राख्नुपर्छ ।

**भाविषीष्ट/भविषीष्ट–** आशीर्लिङ्मा 'भू+सीय्+स्+त' यहाँ यकारको लोप, 'भू+सीस्त' यहाँ "स्यसिच्सीयुट्०"ले चिण्वद्भाव, इट्आगम, वृद्धि भयो, 'भाविसीस्त' दुवै षकारको षत्व, ष्टुत्व भयो, 'भाविषीष्ट' सिद्ध भयो । चिण्वद्भाव नभएको पक्षमा पूर्ववत् इट् आगम, गुण आदि भयो, 'भविषीष्ट' सिद्ध भयो ।

**७५१. चिण् भावकर्मणोः ३।१।६६॥**

च्लेश्चिण् स्याद्भावकर्मवाचिनि तशब्दे परे । अभावि । अभाविष्यत, अभविष्यत । अकर्मकोऽप्युपसर्गवशात्सकर्मकः । अनुभूयते आनन्दश्चैत्रेण त्वया मया च । अनुभूयेते । अनुभूयन्ते । त्वमनुभूयसे ।

---

**चिण् भावेति**– च्लिका स्थानमा चिण् होस्, भाव अथवा कर्मवाचक त शब्द पर भएमा ।

**अभावि**– लुङ्मा 'अभू+च्लि+त', यहाँ च्लिका स्थानमा "चिण् भावकर्मणोः"ले च्लिका स्थानमा चिण् भयो, 'अभू+इ+त' भयो, चिण्मा णित्व हुनाले "अचोञ्णिति"ले भूका ऊकारका स्थानमा वृद्धि भयो, आव् आदेश भयो, 'अभावि+त' "चिणो लुक्"ले तको लुक् भयो, 'अभावि' सिद्ध भयो ।

**अभाविष्यत / अभविष्यत**– लृङ्मा 'अभू+स्यत', भएपछि "स्यसिच्सीयुट्०"ले चिण्वद्भाव, इट्आगम, वृद्धि, आव्आदेश, षत्व भयो, 'अभाविष्यत' सिद्ध भयो । चिण्वद्भाव नभएको पक्षमा इट्, गुण, अव् आदेश, षत्व भयो, 'अभविष्यत' सिद्ध भयो ।

**अकर्मक इति**– कुनै धातु अकर्मक भएपनि उपसर्गका योगमा सकर्मक हुन्छ । सकर्मक भएपछि कर्ममा लकार हुन्छ ।

भूधातु अकर्मक हो तर अनु उपसर्ग लागेपछि अनुभव गर्नु अर्थ हुन्छ र सकर्मक हुन्छ । अनुभव गर्नेवाला कर्ता र अनुभव गरिने वस्तु कर्म भयो ।

**अनुभूयते आनन्दश्चैत्रेण त्वया मया च**– (चैत्रले, तिमीले, मैले, आनन्दको अनुभव गरिन्छ), भन्दा यहाँ अनुभू धातुदेखि "लः कर्मणि०"ले कर्ममा "वर्तमाने लट्" लगाएर वर्तमान कालमा लट्, लट्का स्थानमा त, यक् आदि भएर पूर्ववत् 'अनुभूयते' सिद्ध भयो ।

कर्ममा लकार भएकोले कर्म उक्त भयो, चैत्र, युष्मद्, अस्मद्, यी कर्ता छन् । यी अनुक्त भए । उक्त कर्म आनन्ददेखि प्रथमा भयो । अनुक्त कर्ता चैत्र, युष्मद्, अस्मद्देखि तृतीया भयो ।

कर्तामा रहेको एकत्व, द्वित्व, बहुत्व यहाँ अपेक्षित हुँदैन । कर्ममा रहेको एकत्व, द्वित्व, बहुत्व, अपेक्षित हुन्छ । माथि कर्ममा एकत्व हुनाले एकवचन 'अनुभूयते' भयो । आनन्द धेरै हुन सक्छन्, पुत्रानन्द, ऐश्वर्यानन्द, धर्मानन्द, सत्सङ्गानन्द, आदि आदि । आनन्दको द्वित्व बुझिएमा द्विवचन, बहुत्व बुझिएमा बहुवचन पनि हुन्छ । अनुभूयेते आनन्दौ चैत्रेण त्वया मया च (चैत्रले, तिमीले, मैले, दुई आनन्द अनुभव गरिन्छन् भन्दा) यहाँ अनुउपसर्ग पूर्वक भू धातुदेखि कर्ममा लट्लकार प्रथमपुरुष द्विवचन आताम् भयो, यक् आदि भयो, 'अनुभूयेते' सिद्ध भयो ।

**अनुभूयन्ते**– आनन्दाः (आनन्दहरू अनुभव गरिन्छन्), भन्दा यहाँ अनुउपसर्ग पूर्वक भू धातुदेखि कर्ममा लट्, झ, यगादि भयो, 'अनुभूयन्ते' सिद्ध भयो । त्वमनुभूयसे चैत्रेण त्वया मया अन्यैश्च (चैत्रले, तिमीले, मैले र अरूले पनि तिमी अनुभव गरिन्छौ) यो अर्थमा अनुउपसर्गपूर्वक भू धातुदेखि कर्ममा विहितत् तिङ्को युष्मद् शब्द, त्वम्सँग सामानाधिकरण्य भएकोले मध्यमपुरुषको एकवचन थास् आयो, सेआदेश भयो, पूर्ववत् प्रक्रिया भयो, 'अनुभूयसे' सिद्ध भयो । यस्तै प्रकारले–

युवामनुभूयेथे (तिमी दुई अनुभव गरिन्छौ) यूयमनुभूयध्वे (तिमीहरू अनुभव गरिन्छौ) पनि हुन्छ ।

यहाँ अनुभूयसे, अनुभूयेथे, अनुभूयध्वे को कर्म त्वम्, युवाम्, र यूयम् क्रमशः छन् । कर्ता चैत्रेण, त्वया, मया, अन्यैः यी सबै अथवा, व्यस्त पनि हुन सक्छन् । आफूले आफ्नो अनुभव गर्न सकिने हुँदा युष्मद्शब्द कर्म र कर्ता दुवै हुनसक्छ । कर्ममा प्रथमान्त, कर्तामा तृतीयान्तको रूपले रहन्छ । विशेष कुराहरू आफ्नो बुद्धिले ऊह गर्नू ।

---

अहमनुभूये । अन्वभावि । अन्वभाविषाताम्, अन्वभविषाताम् । णिलोपः । भाव्यते । भावयाञ्चक्रे, भावयाम्बभूवे, भावयामासे । चिण्वदिट् । आभीयत्वेनासिद्धत्वाण्णिलोपः । भाविता, भावयिता ।

---

'अहम् अनुभूये चैत्रेण त्वया मया अन्यैश्च' (चैत्रले, तिमीले र मैले म अनुभव गरिन्छु) भन्दा यहाँ अनुउपसर्गपूर्वक भू धातुदेखि कर्ममा लट्, उत्तमपुरुषको एकवचन इट्, एत्व, यक्, "अतो गुणे"ले पररूप भयो, 'अनुभूये' सिद्ध भयो । यस्तै प्रकारले 'अनुभूयावहे', 'अनुभूयामहे' पनि जान्नू ।

**लिट्मा** अनुबभूवे । **लुट्मा** अनुभाविता/अनुभविता । **लृट्मा**– अनुभाविष्यते/अनुभविष्यते । **लोट्मा** अनुभूयताम् । **लङ्मा**– अन्वभूयत आदि रूप हुन्छन् ।

**अन्वभावि**– अनु उपसर्गपूर्वक भूधातुदेखि कर्ममा लुङ्, अट्आगम, 'अनु+अभू+ल्+त', च्लि, वृद्धि, आव्आदेश, चिण्को लुक्भयो, 'अन्वभावि' सिद्ध भयो ।

**अन्वभाविषाताम्/अन्वभविषाताम्**– अनुभूदेखि कर्ममा लुङ्, अट्, आताम्, च्लि, च्लिका स्थानमा सिच् भएपछि 'अनु+अभू+स्+आताम्' यहाँ "स्यसिच्सीयुट्"ले चिण् वद्भाव इट्आगम भूका ऊकारका स्थानमा वृद्धि आदि भयो, "अन्वभाविषाताम्" चिण्वद्भाव नभएको पक्षमा पनि इट्, गुण, अव् आदेश आदि भयो, 'अन्वभविषाताम्' भयो । यस्तै प्रकारले अरू रूप पनि जान्नू ।

कर्मवाच्यमा अनु भू लुङ् का रूप-

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र.पु. | अन्वभावि | अन्वभाविषाताम्/भविषाताम् | अन्वभाविषत/भविषत |
| म.पु. | अन्वभाविष्ठाः/भविष्ठाः | अन्वभाविषाथाम्/भविषाथाम्<br>अन्वभविढ्वम्/ध्वम् । | अन्वभाविढ्वम्/ध्वम्, |
| उ.पु. | अन्वभाविषि/भविषि | अन्वभाविष्वहि/भविष्वहि | अन्वभाविष्महि/भविष्महि |

अब ण्यन्त भू धातुको कर्मवाच्यमा रूपसिद्धिप्रक्रिया देखाइन्छ ।

भवन् देवदत्तो यज्ञदत्तेन प्रेर्यते (हुन लागेको देवदत्त, यज्ञदत्तद्वारा प्रेरित हुन्छ) यस अर्थमा ण्यन्त भावि धातुदेखि कर्म अर्थमा लकार हुन्छन् ।

**भाव्यते**– भूधातुको ण्यन्त भावि धातुदेखि कर्ममा लट्, त, यक्, भयो, 'भावि+य+ते' यहाँ "णेरनिटि"ले णिको लोप भयो, 'भाव्यते' सिद्ध भयो । (भाव्यते देवदत्तो यज्ञदत्तेन इति प्रयोगः)

**भावयाञ्चक्रे**– ण्यन्त भावि धातुदेखि कर्ममा लिट् भयो, आम्प्रत्यय "अयामन्ता०"ले अय् आदेश, लिट्को लुक्, कृको अनुप्रयोग आदि भएर 'भावयाञ्चके' सिद्ध भयो । यस्तै भावयाम्बभूवे, भावयामासे हुन्छ । यहाँ ण्यन्त भावि धातुदेखि अनुप्रयुज्यमान कृ धातु, भू धातु, अस् धातुदेखि पर रहेको लिट् पनि कर्म अर्थमा नै भएको हुँदा "भावकर्मणोः"ले ती धातुदेखि आत्मनेपद नै हुन्छ ।

**भाविता**– ण्यन्त भावि धातुदेखि कर्ममा लुट्, प्रथमपुरुषको एकवचनमा 'भावि+ता' यहाँ "स्यसिच्सीयुट्०"ले [११४] चिण्वद्भाव, इट्आगम भयो, "असिद्धवदत्राभात्" लगाएर इट्आगम असिद्ध भयो, "णेरनिटि"ले णिलोप भयो, 'भाविता' सिद्ध भयो । चिण्वद्भाव नभएको पक्षमा 'भावि+ता' यस्तै छ, यहाँ "आर्धधातुकस्येड्०"ले इट् भयो, 'भावि+इता', गुण, अय् आदेश भयो, 'भावयिता' सिद्ध भयो ।

---

११४ उपदेशमा जो अच् छ तदन्त धातु भन्ने अर्थ गरेकोले ण्यन्त धातुदेखि चिण्वदिट् हुन्छ ।

भाविष्यते, भावयिष्यते । अभाव्यत । भाव्येत । भाविषीष्ट, भावयिषीष्ट । अभावि । अभाविषाताम्, अभावयिषाताम् । बुभूष्यते । बुभूषाञ्चके । बुभूषिता । बुभूषिष्यते । बोभूय्यते । बोभूयते ॥

---

यस्तै प्रकारले अन्यत्र पनि चिण्वद् इट् भएको पक्षमा णिलोप हुन्छ । चिण्वद् इट् नभएको पक्षमा "आर्धधातुकस्येड्०"ले इट् हुन्छ र गुण, अय्आदेश हुन्छ । चिण्वद्भाव भएमा गरेको इट् "असिद्धवदत्राभात्"ले असिद्ध हुन्छ र णिलोप हुन्छ। "आर्धधातुकस्येड्०"ले गरेको इट् सिद्ध नै हुन्छ र णिलोप हुन्न गुण, अय्आदेश हुन्छ ।

**लृट्मा-** भाविष्यते/भावयिष्यते । **लोट्मा** भाव्यताम् । **लङ्मा** अभाव्यत । **विधिलिङ्मा** भाव्येत । **आशीर्लिङ्मा** भाविषीष्ट/भावयिषीष्ट । आदि रूप हुन्छन् ।

आर्शीलिङ्को ध्वम्मा भाविषीढ्वम्/षीध्वम्/भावयिषीढ्वम्/षीध्वम् । यी चार रूप हुन्छन् ।

ण्यन्त भू धातु अर्थात् भावि धातु लुङ्- (कर्मवाच्य)

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र.पु. | अभावि | अभाविषाताम्/वयिषाताम् | अभाविषत/वयिषत |
| म.पु. | अभाविष्ठाः/वयिष्ठाः | अभाविषाथाम्/वयिषाथाम् | अभाविढ्वम्/ध्वम्<br>अभावयिढ्वम्/ध्वम् |
| उ.पु. | अभाविषि/वयिषि | अभाविष्वहि/वयिष्वहि | अभाविष्महि/वयिष्महि |

**बुभूष्यते-** (हुन इच्छा गरिन्छ), यहाँ इच्छा कर्म धातुभित्रै अन्तर्हित छ। अतः बुभूष धातुअकर्मक भयो, सन्नत बुभूष धातुदेखि भावमा लट्, त, यक् बुभूषका अकारको "अतो लोपः"ले लोप भयो, 'बुभूष्यते' सिद्ध भयो ।

**बुभूषाञ्चक्रे, बुभूषाम्बभूवे, बुभूषामासे-** सन्नन्त बुभूष धातुदेखि लिट्, आम्, बुभूषका अकारको "अतो लोपः"ले लोप 'बुभूषाम्'देखि कृ को अनुप्रयोग भयो, 'बुभूषाञ्चक्रे' सिद्ध भयो । भूको अनुप्रयोगमा 'बुभूषाम्बभूवे' सिद्ध भयो । अंस्को अनुप्रयोग 'बुभूषामासे' सिद्ध भयो ।
**बुभूषिता-** लुट्मा 'बुभूष+इता', यहाँ "अतो लोपः"ले अकारको लोप भयो, 'बुभूषिता' सिद्ध भयो ।

**लृट्मा-** बुभूष धातुदेखि लृट्, त, स्य, इट् आगम 'बुभूष+इष्यते'ले सन्का अकारको "अतो लोपः"ले लोप भयो, 'बुभूषिष्यते' सिद्ध भयो ।

लोट् आदि लकारका रूप तल दिइन्छ- बुभूष्यताम् । अबुभूष्येत । बुभूष्यते । बुभूषिषीष्ट । अबुभूषिष्ट । अबुभूषिष्यत ।

यङन्तभू धातु बोभूय र यङलुगन्त भू धातु बोभूदेखि भाव अर्थमा लकार हुँदाको दिग्दर्शन मूलमा एक एक रूप दिएर गरेको छ ।

**बोभूय्यते-** पुन पुनरतिशयेन वा भूयते (फेरि फेरि वा अतिशय रूपमा होइन्छ) यस अर्थमा बोभूय धातुदेखि भाव अर्थमा लट् त, यक् भएपछि 'बोभूय'का अकारको "अतो लोपः"ले लोप भयो, 'बोभूय्यते' सिद्ध भयो। यस्तै प्रकारले बोभूयाञ्चक्रे। बोभूयिता। बोभूयिष्यते आदि रूपको पनि ऊह गर्नू।

**बोभूयते-** पुनः पुनरतिशयेन वा भूयते यो अर्थमा नै यङ्लुगन्त बोभूधातुदेखि भावमा लट् लकार त यक् भयो, 'बोभूयते' भयो । यस्तै प्रकारले लिट्मा 'बोभवाञ्चक्रे' सिद्ध हुन्छ ।

**लुट्मा** "स्यसिच्तासि०"ले चिण्वद्भाव र इट् आगम हुन्छ । बोभाविता/बोभविता । **लृट्मा** बोभाविष्यते/बोभविष्यते । **लुङ्मा-** अबोभाविष्ट/अबोभविष्ट । यङन्त कतृवार्च्य सार्वधातुक लकारका

---

"अकृत्सार्वधातुकयोर्दीर्घः" । स्तूयते विष्णुः । स्ताविता, स्तोता । स्ताविष्यते, स्तोष्यते । अस्तावि । अस्ताविषाताम्, अस्तोषाताम् ॥ **ऋ** गतौ ॥ गुणोऽर्तीति गुणः । अर्यते ॥ **स्मृ** स्मरणे ॥ सस्मरे ।

---

रूप र यङ्लुगन्त भाव वाच्यका सार्वधातुक लकारका रूप समान हुन्छन् । यङन्त कर्तृवाच्यमा यङ्को य बीचमा हुन्छ । यङ्लुगन्त भाववाच्यमा यक्प्रत्ययको य बीचमा रहन्छ ।

**अकृदिति**- स्तूयते यहाँ "अकृत्सार्वधातुकयोदीर्घः"ले दीर्घ स्तुधातुको दीर्घ हुन्छ ।

**स्तूयते विष्णुः**-(विष्णु स्तुति गरिन्छन् ।) यहाँ स्तु धातुदेखि कर्म अर्थमा लट् लकार, लकारका स्थानमा त, तका अकारको एत्व, यक्, "अकृत्सार्वधातुकयोः"ले स्तुका उकारका स्थानमा दीर्घ ऊकार भयो, 'स्तूयते' सिद्ध भयो ।

**कर्तृवाच्यमा**- भक्तो विष्णुं स्तौति (भक्तले विष्णुलाई स्तुति गर्छ ।)

**कर्मवाच्यमा**- भक्तेन विष्णुः स्तूयते (भक्तद्वारा विष्णु स्तुति गरिन्छन् ।)

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| **स्तु लट् कर्मवाच्य-** | प्रथमपुरुष | स्तूयते | स्तूयेते | स्तूयन्ते |
| | मध्यमपुरुष | स्तूयसे | स्तूयेथे | स्तूयध्वे |
| | उत्तमपुरुष | स्तूये | स्तूयावहे | स्तूयामहे |
| **स्तु लिट् कर्मवाच्य-** | प्रथमपुरुष | तुष्टुवे | तुष्टुवाते | तुष्टुविरे |
| | मध्यमपुरुष | तुष्टुविषे | तुष्टुवाथे | तुष्टुविढ्वे/तुष्टुविध्वे |
| | उत्तमपुरुष | तुष्टुवे | तुष्टुविवहे | तुष्टुविमहे |

**स्ताविता/स्तोता**- लुट् प्रथमपुरूष एकवचनमा 'स्तु+ता' भएपछि चिण्वद्भाव भएका पक्षमा इट् वृद्धि भयो, 'स्ताविता' सिद्ध भयो । चिण्वद्भाव नभएका पक्षमा इट् आगमको "एकाच०"ले निषेध भयो, 'स्तोता' सिद्ध भयो । यसरी दुईथरी रूप हुन्छन् । लृट्मा पनि यसैगरी स्ताविष्यते, स्तोष्यते आदि दुई थरी रूप हुन्छन् । दिग्दर्शनार्थ लोट्, लङ् र लिङ्का प्रथमपुरूष एकवचनका मात्र रूप दिइन्छ । अरू.आफैं सिद्ध गर्नू ।

**लोट्मा** स्तूयताम् । **लङ्मा** अस्तूयत । **विधिलिङ्मा** स्तूयेत । **आशीर्लिङ्मा** स्ताविषीष्ट/स्तोषीष्ट ।

**अस्तावि**- लुङ्मा प्रथमपुरुष एकवचनमा च्लिका स्थानमा चिण् भएपछि तको लुक् भयो, 'अस्तावि' सिद्ध भयो ।

**अस्ताविषाताम्/अस्तोषाताम्**- आताम्मा चिण्वद्भाव भएको पक्षमा 'अस्ताविषाताम्' नभएको पक्षमा 'अस्तोषाताम्' यी रूप सिद्ध हुन्छन् । अरू रूप पनि यसैगरी सिद्ध गर्नू ।

**लृङ्मा** अस्ताविष्यत अस्तोष्यत आदि । अदादिको "ऋ गतौ"धातु हिड्नु अर्थमा छ ।। भ्वादिको 'ऋ गतिप्रापणयोः' यो धातु हिड्नु र पुऱ्याउनु अर्थमा छ ।

**गुणोर्तीति**- ऋ धातुदेखि यक् पर भएमा "गुणोर्तिसंयोगाद्योः०"ले गुण हुन्छ ।

**अर्यते**- पूर्ववत् ऋ धातुदेखि कर्ममा लट् त यक् भएपछि "गुणोऽर्ति०"ले ऋकारका स्थानमा अर् गुण भयो, 'अर्यते' सिद्ध भयो । अरू सबै रूप आफै ऊह गर्नू । स्मृधातु सम्झनु अर्थमा छ ।

**स्मर्यते**- लट्लकारमा 'स्मृ+य+ते' यहाँ स्मृधातु संयोगादि ऋकारान्त हुनाले "गुणोऽर्ति०"ले गुण भयो, 'स्मर्यते' सिद्ध भयो ।

**लिट्मा**- ऋ धातुमा आरे आदि । स्मृ धातुमा सस्मरे आदि । ध्वम्मा आरिढ्वे/आरिध्वे । सस्मरिढ्वे/सस्मरिध्वे यी रूप हुन्छन् । अरू रूप आफै स्मरण गर्नू ।

उपदेशग्रहणाच्चिण्वदिट्। आरिता, अर्ता। स्मारिता, स्मर्ता। अनिदितामिति नलोपः। स्रस्यते। इदितस्तु नन्द्यते। संप्रसारणम्। इज्यते॥

**७५२. तनोतेर्यकि ६।४।४४॥**

अकारोऽन्तादेशो वा स्यात्। तायते, तन्यते॥

**७५३. तपोऽनुतापे च ३।१।६५॥**

तपश्च्लेश्चिण् न स्यात् कर्मकर्तर्यनुतापे च।

---

"स्यसिच्सीयुट्०" यो सूत्रमा उपदेशे भनेको हुनाले यो ऋ धातु गुण भएपछि हलन्त भएपनि उपदेशमा अजन्त धातु हुनाले चिण्वद्भाव र इट् आगम हुन्छ।

**आरिता/अर्ता**– लुट्मा 'ऋ+ता' यहाँ चिण्वदिट् भएमा वृद्धि भयो, आरिता सिद्ध भयो। न भएमा गुण भयो, 'अर्ता' यी दुई रूप सिद्ध भए।

**आरिष्यते/अरिष्यते**– लृट् लकारमा चिण्वदिट् भएमा 'आरिष्यते', नभएमा "ऋद्धनोः स्ये"ले इट् आगम भयो, गुण भयो, 'अरिष्यते' यी दुई रूप सिद्ध भए। यस्तै प्रकारले अरू रूप सिद्ध गर्नू।

स्मृ धातुको पनि लुट् लृट्मा ऋ धातुको जस्तै प्रक्रिया हुन्छ। स्मारिता/स्मर्ता। स्मारिष्यते स्मरिष्यते आदि रूप हुन्छन्।

**लोट्**– स्मर्यताम् **लङ्मा** अस्मर्यत। **विधिलिङ्** स्मर्येत। **आशीर्लिङ्मा** स्मारिषीष्ट/स्मृषीष्ट आदि रूप हुन्छन्। **लुङ्मा** अस्मारि, अस्मारिषाताम्/अस्मृषाताम्, अस्मारिषत/अस्मृषत, आदि **लृङ्मा** अस्मारिष्यत/अस्मरिष्यत आदि रूप हुन्छन्।

**अनिदितेति**– स्रंस् धातुको भाव अर्थको लट्लकारमा यक् प्रत्यय पर भएमा "अनिदितां०"ले नकारको लोप हुन्छ।

**स्रस्यते**– स्रंस् धातुदेखि भावमा लट् त, यक् भयो, 'स्रंस्+य+ते' यहाँ य कित् पर हुनाले "अनिदितां हल उपधायाः०"ले स्रन्स्का उपधाका नकारको लोप भयो, 'स्रस्यते' सिद्ध भयो। यस्तै प्रकारले भ्रंश् धातुको 'भ्रश्यते' र ध्वंस् धातुको 'ध्वस्यते' रूप हुन्छ। स्रंस् आदि धातु हलन्त हुनाले चिण्वद्भाव हुँदैन। लुङ्मा च्लिका स्थानमा त पर भएमा चिण् हुन्छ।

**इदित इति**– इकारको इत्संज्ञा हुने धातुका नकारको त लोप हुन्न। नन्द् धातुदेखि भावमा लट् भयो, त एत्व, यक्, भयो, 'नन्द्यते' सिद्ध भयो। यहाँ नन्द् धातु इकारको इत्सज्ञां हुने धातु हुनाले नकारको लोप हुदैंन।

**इज्यते**– यज् धातुको कर्म अर्थको लट् लकारमा 'यज्+य+ते' यहाँ "वचिस्वपि०"ले सम्प्रसारण भयो, 'इज्यते' सिद्ध भयो। **लिट्मा** ईजे। **लुट्मा** यष्टा। **लृट्मा** यक्ष्यते आदि रूप हुन्छन्।

**तनोतेरिति**– तन् धातुका अन्त्य अल्का स्थानमा आकार आदेश होस्, यक् प्रत्यय पर भएमा।

**तायते/तन्यते**– तन् धातुदेखि कर्ममा लट्, लट्का स्थानमा त, तका अकारका स्थानमा एत्व, यक् प्रत्यय, भएपछि 'तन्+य+ते' यहाँ "तनोतेर्यकि"ले तन्का नकारका स्थानमा आकार आदेश भयो, दीर्घ भयो, 'तायते' सिद्ध भयो। यक् नभएका पक्षमा 'तन्यते' भयो।

**तप इति**– तप् धातुदेखि विधान गरिएका च्लिका स्थानमा चिण् नहोस् कर्म नै कर्ता भएमा र अनुताप अर्थमा।

**तप** धातु तताउनु अर्थमा सकर्मक छ। पश्चात्ताप गर्नु अर्थमा अकर्मक हुन्छ। अनु उपसर्ग लागेपछि पश्चात्ताप अर्थ बुझिन्छ।

---

अन्वतप्त पापेन । घुमास्थेतीत्त्वम् । दीयते । धीयते । ददे ॥

**७५४. आतो युक् चिण्कृतोः ७।३।३३॥**

आदन्तानां युगागमः स्याच्चिणि ञ्णिति कृति च । दायिता, दाता । दायिषीष्ट, दासीष्ट । अदायि । अदायिषाताम् ॥

---

**लट्मा** अनुतप्यते हुन्छ । अरू लकारमा विशेष प्रक्रिया छैन । लुङ्मा विशेष प्रक्रिया छ ।

**अन्वतप्त**– अनु उपसर्ग पूर्वक तप् धातुदेखि भाव अर्थमा लुङ्, अट्आगम, लकारका स्थानमा त, च्लिप्रत्यय भएपछि 'अनु+अतप्च्लि+त' यहाँ च्लिका स्थानमा चिण् पाएकोमा अनुताप अर्थ बुझिएकोलेनै "तपोऽनुतापे च"ले चिण् आदेशको निषेध भयो, तव च्लिका स्थानमा सिच् भयो, इट्आगमको निषेध भयो, 'अनु+अतप्+स्+त' यहाँ "झलो झलि"ले सकारको लोप भयो, 'अनु+अतप्त', यण् भयो, 'अन्वतप्त' सिद्ध भयो ।

यसको उदाहरणमा प्रयोग गर्दा 'अन्वतप्त पापेन' (पापीले पश्चात्ताप गरियो ।) कर्तृवाच्यमा 'पापः अन्वताप्सीत्' (पापीले पश्चात्ताप गऱ्यो) हुन्छ । 'अन्वतप्त पापेन' यो भाववाच्यको उदाहरण हो । पाप शब्ददेखि 'पापम्+अस्ति+अस्य' यस विग्रहमा मत्वर्थीय अच्प्रत्यय भएर पापशब्द बन्दछ, अतः पाप शब्दको, पापी भन्ने अर्थ हुन्छ ।

**घुमेति**– दा धातुमा "घुमास्थागापाजहातिसां हलि"ले ईत्व हुन्छ ।

**दीयते, धीयते**– दा धातुदेखि कर्म अर्थमा लट्, त, एत्व, यक् भयो, यक्लाई आर्धधातुकसंज्ञा भयो, "घुमास्थागापा०"ले यक्-आर्धधातुक पर छ र दाका आकारका स्थानमा ईकार भयो, 'दीयते' सिद्ध भयो । यस्तै प्रकारले धा धातु देखि कर्म अर्थमा लट्लकार गरेमा 'धीयते' पनि सिद्ध हुन्छ ।

| | पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|---|
| **दा लट्** (कर्मवाच्य)– | प्रथमपुरुष | दीयते | दीयेते | दीयन्ते |
| | मध्यमपुरुष | दीयसे | दीयेथे | दीयध्वे |
| | उत्तमपुरुष | दीये | दीयावहे | दीयामहे |
| **धा लट्** (कर्मवाच्य)– | प्रथमपुरुष | धीयते | धीयेते | धीयन्ते |
| | मध्यमपुरुष | धीयसे | धीयेथे | धीयध्वे |
| | उत्तमपुरुष | धीये | धीयावहे | धीयामहे |

**लिट्मा**– ददे, ददाते, ददिरे । दधे दधाते दधिरे आदि ।

**आत इति**– आकारान्त धातुको युक् आगम होस्, चिण् पर भएमा ञकार णकारको इत्संज्ञा हुने प्रत्यय पर भएमा ।

**दायिता/दाता**– दा धातुदेखि कर्म अर्थमा लुट्, प्रथमपुरुष एकवचनमा 'दा+तास्+ति' यहाँ तिका स्थानमा डा, टिलोप, 'दा+ता' भयो, "स्यसिच्सीयुट्०"ले चिण्वद्भाव, तासि प्रत्ययको इट् आगम भयो, 'दायिता' सिद्ध भयो । चिण्वद्भाव नहुँदा इट् आगमको निषेध भयो, 'दाता' सिद्ध भयो ।

**लृट्मा** दायिष्यते/दास्यते । **लोट्मा**– दीयताम् । **लङ्मा**– अदीयत । **विधिलिङ्मा** दीयेत । **आशीर्लिङ्मा** दायिषीष्ट/दासीष्ट आदि रूप हुन्छन् ।

**अदायि**– लुङ् प्रथमपुरुष एकवचनमा च्लिका स्थानमा चिण् भएपछि 'अदा+इ+त' भयो, त को लुक्, "आतो युक्०"ले दा धातुको युक् आगम भयो, 'अदायि' सिद्ध भयो ।

**अदायिषाताम्/अदिषाताम्**– दा धातुदेखि लुङ् प्रथमपुरुष द्विवचन आताम्, च्लि, सिच्, चिण्वद्भाव, इट्, युक् भयो, 'अदायिषाताम्' सिद्ध भयो । चिण्वद्भाव नभएमा 'अदा+स्+आताम्'

भज्यते ॥

**७५५. भञ्जेश्च चिणि ६।४।३३॥**

नलोपो वा स्यात्। अभाजि, अभञ्जि ॥ लभ्यते ॥

**७५६. विभाषा चिण्णमुलोः ७।१।६९॥**

लभेर्नुमागमो वा स्यात्। अलम्भि, अलाभि ॥

## इति भावकर्मप्रक्रिया ॥

---

यहाँ "स्थाघ्वोरिच्च"ले दाको इत्व, सिच्को कित्त्व भयो, अतः गुण भएन षत्व भयो, 'अदिषाताम्' सिद्ध भयो। लुङ्का सबै रूप तल दिइन्छ-

**दा लुङ्** (कर्मवाच्य)-

| पुरुष | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| प्र.पु. | अदायि | अदायिषाताम्/अदिषाताम् | अदायिषत/अदिषत। |
| म.पु. | अदायिष्ठाः/अदिथाः | अदायिषाथाम्/अदिषाथाम् | अदायिढ्वम्/ध्वम्/अदिढ्वम् |
| उ.पु. | अदायिषि/अदिषि | अदायिष्वहि/अदिष्वहि | अदायिष्महि/अदिष्महि |

**लृङ्मा**– अदायिष्यत/अदास्यत आदि रूप हुन्छन्। दाधातुका जस्तै धा धातुका रूप पनि हुन्छन्।

**भञ्जो** धातु भाँच्नु अर्थमा छ। रुधादिको यो धातु अनिट् सकर्मक हो।

**भज्यते**- (भाँचिन्छ।) भञ्ज् धातुदेखि कर्ममा लट्, त, यक्, 'भञ्ज्+य+ते', "अनिदितां०"ले नकारको लोप भयो, 'भज्यते' सिद्ध भयो।

**भञ्जेरिति**– भञ्ज् धातुका नकारको लोप विकल्पले होस् चिण् पर भएमा।

**अभाजि/अभञ्जि**– भञ्ज् धातुदेखि कर्म अर्थमा लुङ् प्रथमपुरुष एकवचन त, च्लि, च्लिका स्थानमा चिण् भयो, 'अभञ्ज्+इ+त' यहाँ चिण्को लुक् भएपछि "भञ्जेश्च चिणि"ले नकारको लोप भयो, 'अभज्+इ', भयो, "अत उपधायाः"ले वृद्धि भयो, 'अभाजि' सिद्ध भयो। नकारको लोप नभएका पक्षमा 'अभञ्जि' सिद्ध भयो। यसरी दुई रूप भए।

बाँकी रूप- अभङ्क्षाताम्, अभङ्क्षत। अभङ्क्थाः, अभङ्क्षाथाम्, अभङ्ग्ध्वम्। अभङ्क्षि, अभङ्क्ष्वहि, अभङ्क्ष्महि। यहाँ आताम् आदि अजादि विभक्तिमा र वहि महिमा सकारको लोप हुँदैन। "चोःकुः"ले कुत्व, षत्व र क्षत्व हुन्छ। थास्मा सलोप कुत्व, चर्त्व, ध्वम्मा सलोप कुत्व, हुन्छ।

**लृङ्मा** अभङ्क्ष्यत आदि रूप हुन्छन्।

**डुलभष्** धातु पाउनु अर्थमा छ। भ्वादिको यो धातु आत्मनेपदी अनिट् सकर्मक हो। कर्ममा लट् देखि लिङ्लकारसम्म क्रमशः– लभ्यते। लेभे। लब्धा। लप्स्यते। लभ्यताम्। अलभ्यत। लभ्येत। लप्सीष्ट। आदि रूप हुन्छन्। लुङ्लकारमा विशेषप्रक्रिया छ।

**विभाषेति**- लभ् धातुको नुम आगम विकल्पले होस् चिण् र णमुल् पर भएमा।

**अलाभि, अलम्भि**– लभ् धातुदेखि लुङ्, अट्, त, च्लि, चिण्, तको लुक्, 'अलभ्+इ', यहाँ "विभाषा चिण्णमुलोः०"ले नुम् भयो, 'अलम्भि' सिद्ध भयो। नुम् नभएको पक्षमा वृद्धि भयो, 'अलाभि' सिद्ध भयो। यसरी दुई रूप भए।

**भावकर्मप्रक्रिया समाप्त भयो।**

---

## अथ कर्मकर्तृप्रक्रिया

यदा कर्मैव कर्तृत्वेन विवक्षितं तदा सकर्मकाणामप्यकर्मकत्वात्कर्तरि भावे च लकारः ॥

**७५७. कर्मवत्कर्मणा तुल्यक्रियः ३।१।८७॥**

कर्मस्थया क्रियया तुल्यक्रियः कर्ता कर्मवत्स्यात् । कार्यातिदेशोऽयम् । तेन यगात्मनेपदचिण्चिण्वदिटः स्युः । पच्यते फलम् । भिद्यते काष्ठम् ।

---

### अब कमकर्तृप्रक्रिया शुरू हुन्छ

यौटै वाक्यमा पच् धातुको प्रयोगमा 'चैत्रो वह्निना स्थाल्यां तण्डुलं पचति' यस वाक्यमा कर्ता, करण, अधिकरण र कर्मकारक देखिन्छन् । यहाँ चैत्रलाई कर्ता नमानेर करण-वह्निलाई कर्ता मान्दा, 'वह्निः पचति' यस्तो हुन्छ । अधिकरण स्थालीलाई कर्ता मान्दा 'स्थाली पचति' हुन्छ । कर्म तण्डुललाई कर्ता मानेमा 'तण्डुलः पच्यते' हुन्छ । कर्म कर्ता भएमा मात्र "कर्मवत्कर्मणा०"ले ( आगामि सूत्रले) कर्मवद्भाव हुन्छ । जहाँ कर्तालाई कर्ता नमानेर कर्मलाई कर्ता मानिन्छ त्यहाँ क्रियाको सौकर्यातिशय बुझिन्छ । सजिलैसँग त्यो क्रिया सम्पन्न हुनु नै सौकर्यातिशय हो । यही कुरा "यदा सौकर्यातिशयं द्योतयितुम्" इत्यादि पङ्क्तिमा स्पष्ट गरेको छ ।

**यदेति**– जब सौकार्यातिशय बुझाउन कर्मलाई नै कर्तृत्वले विवक्षा गरिन्छ, तब सकर्मक धातु पनि अकर्मक हुन्छन् र सकर्मक धातुदेखि पनि कर्तामा र भावमा लकारहरू हुन्छन् ।

**कर्मवदिति**– कर्ममा रहेको क्रियाले तुल्यक्रिया भएको कर्ता कर्म जस्तै होस् ।

**कार्यातिदेश इति**- कर्म जस्तो होस् भनेर यहाँ जो अतिदेश गरियो त्यो कार्यहरूको अतिदेश हो । अर्थात् कर्ता कर्म नै हुने होइन कि कर्ममा लकार गर्दा हुने कार्यहरू हुन्छन् भनेको हो ।

**तेनेति**- त्यसकारण यहाँ कर्तामा लकार भए पनि कर्ममा लकार भएमा हुने यक्, आत्मनेपद, चिण् र चिणवदिट् यी चार कुरा हुन्छन् । 'कालः फलं पचति' यहाँ काल कर्ता र फल कर्म छ । यसको अर्थ छ– समयले फल पकाउँछ । अब फललाई समयले पकाउनु पर्दैन, समय आएपछि फल अनायास आँफै पाक्छ, यस्तो मानेमा 'पच्यते फलम्' यस्तो प्रयोग हुन्छ । यहाँ पाक्नु क्रिया पहिलो वाक्यमा कर्ममा थियो । अहिले दोस्रो वाक्यमा त्यही क्रिया कर्तामा रह्यो । त्यही कर्मलाई कर्ता मानिएकोले कर्तामा रह्यो । अतः कर्ममा रहेको क्रियाले तुल्यक्रिया भएको कर्ता भयो, 'फल' पुनः कर्म जस्तै होस् भनेकोले कर्तामा लकार भएपनि कर्ममा हुने उक्त चार कुरा हुने भए ।

**पच्यते फलम्**- (फल आँफै पाक्छ), भन्दा कर्ममा रहेको क्रिया छ पाक्नु, पाक्नुले तुल्यक्रिया भएको कर्ता छ फल र "कर्मवत्कर्मणा तुल्यक्रियः" यो सूत्रले फल कर्म जस्तै भयो । अर्थात् पच् धातुदेखि कर्तामा लकार भए पनि त्यो कर्ता कर्म जस्तै भयो । लकारका स्थानमा "भावकर्मणोः"ले प्रथमपुरूष एकवचन त, भयो, एत्व भयो, यक् भयो, 'पच्यते फलम्' सिद्ध भयो । यहाँ पच्येते, पच्यन्ते आदि सबै वचन र पुरुषका रूप हुन्छन् ।

**भिद्यते काष्ठम्**- (काठ आँफै चिरिन्छ ।) "देवदत्त काष्ठं भिनत्ति" यो वाक्यमा काठ कर्म छ । तर यहाँ क्रियाको सौकर्यातिशय बुझिंदा काठ आफैं अनायास चिरिन्छ भन्ने अर्थमा कर्ममा रहेको चिरिनु क्रियाले तुल्यक्रिया भएको कर्ता काष्ठलाई "कर्मवत् कर्मणा०" ले कर्मवद्भावपछि

अपाचि । अभेदि । भावे तु भिद्यते काष्ठेन ॥

इति कर्मकर्तृप्रक्रिया ॥

## अथ लकारार्थप्रक्रिया

**७५८. अभिज्ञावचने लृट् ३।२।११२॥**

स्मृतिबोधिन्युपपदे भूतानद्यतने धातोर्लृट् । लङोऽपवादः ॥ **वस** निवासे । स्मरसि कृष्ण गोकुले वत्स्यामः । एवं बुध्यसे, चेतयसे इत्यादिप्रयोगेऽपि ॥

---

भिद् धातुदेखि पूर्ववत् आत्मनेपद यक् आदि भयो, 'भिद्यते काष्ठम्' सिद्ध भयो ।

**अपाचि, अभेदि–** (भात आफैं पाक्यो, दाउरो आफैं चिरियो) सजिलैसँग पाक्यो, सजिलै सँग चिरियो, यस अर्थमा भात र दाउरा, पाक्ने र चिरिने काममा पहिले कर्म थिए । हाल कर्ता भएका छन् । ती दुवैलाई "कर्मवत्कर्मणा०"ले कर्मवद्भाव भएकोले पच् धातुदेखि विधान गरिएको लुङ्लकार आत्मनेपद प्रथमपुरुष एकवचन च्लिका स्थानमा चिण् आदेश भयो, वृद्धि भयो, 'अपाचि' सिद्ध भयो । भिद्को लुङ्मा पनि च्लि, चिण्, लघूपधगुण भयो, 'अभेदि' सिद्ध भयो ।

'पच्यते फलम्' यहाँ 'फल' कर्ता हो । 'भिद्यते काष्ठम्' यहाँ 'काष्ठ' कर्ता हो । यहाँ कर्तामा प्रत्यय भएकोले कर्ता उक्त भयो र फल शब्द र काष्ठ शब्ददेखि कर्तामा प्रथमा भयो । यस्तै "भिद्यते हृदयग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः" इत्यादि कर्मकर्ताका उदाहरण हुन् ।

**भावे तु इति–** भावमा लकार भएमा त 'पच्यते फलेन' । भिद्यते काष्ठेन' यस्तो हुन्छ । कर्मकर्तादेखि भावमा प्रत्यय गरेमा भाव उक्त हुन्छ, कर्ता अनुक्त हुन्छ तब "कर्तृकरणयोस्तृतीया"ले अनुक्तकर्तामा तृतीया हुन्छ र 'पच्यते फलेन' । 'भिद्यते काष्ठेन' यस्तो रूप हुन्छ । यहाँ प्रथम पुरुषको एकवचनमात्र हुन्छ ।

कर्मकर्तृप्रक्रिया सकियो ।

### अब लकारार्थप्रक्रिया आरम्भ गरिन्छ ।

सामान्य रूपमा लट् आदि लकार कुन कुन अर्थमा प्रयोग हुन्छन्, त्यो कुरा तिङन्त प्रकरणको शुरूमा नै बताइएको छ । अब यहाँ लकारका विशेष अर्थहरू बताइन्छ ।

**अभिज्ञेति–** स्मृतिबोधक धातु उपपद भएमा भूत, अनद्यतन कालमा रहेका क्रियालाई कहने धातुदेखि लृट् लकार होस् । यो लङ् लकारको अपवाद हो ।

**वस** धातु वस्नु अर्थमा छ । यो भ्वादिको परस्मैपदी धातु हो । (अनिट्, अकर्मक )

**स्मरसि** कृष्ण ! गोकुले वत्स्यामः (सम्झन्छौं कृष्ण गोकुलमा बस्थ्यौं) यहाँ 'स्मरसि' यो स्मृतिवोधक धातु उपपद भएको हुनाले वस् धातुदेखि अनद्यन भूत अर्थमा "अनद्यतने लङ्"ले पाएको लङ् लकारलाई बाधेर "अभिज्ञावचने लृट्"ले लृट्लकार भयो, 'वत्स्यामः' भयो ।

**एवमिति–** यस्तै प्रकारले 'बुध्यसे', 'चेतयसे' इत्यादि प्रयोगमा पनि लृट् लकार हुन्छ । "बुध्यसे कृष्ण ! गोकुले वत्स्यामः । चेतयसे कृष्ण ! गोकुले वत्स्यामः ।" आदि प्रयोग उदाहरणीय छन् ।

**७५९. न यदि ३।२।११३॥**

यद्योगे उक्तं न । अभिजानासि कृष्ण यद्वने अभुञ्ज्महि ॥

**७६०. लट् स्मे ३।२।११८॥**

लिटोऽपवादः । यजति स्म युधिष्ठिरः ॥

**७६१. वर्तमानसामीप्ये वर्तमानवद् वा ३।३ १३१॥**

वर्तमाने ये प्रत्यया उक्तास्ते वर्तमानसामीप्ये भूते भविष्यति च वा स्युः । कदागतोऽसि । अयमागच्छामि, अयमागमं वा । कदा गमिष्यसि । एष गच्छामि, गमिष्यामि वा ॥

**७६२. हेतुहेतुमतोर्लिङ् ३।३।१५६॥**

वा स्यात् । कृष्णं नमेच्चेत्सुखं यायात् ।

---

**नेति**– यद् शब्दको योगमा स्मरणार्थक धातु उपपद भए पनि भूतानद्यतनकालमा रहेको धातुदेखि लृट् लकार नहोस् ।

अभिजानासि कृष्ण ! यद्वने अभुञ्ज्महि (सम्झन्छौ कृष्ण ! जो वनमा खाएका थियौं), यहाँ **स्मृतिबोधक** अभि उपसर्ग पूर्वक ज्ञा धातु-अभिजानासि उपपद हुनाले लङ्लाई बाधेर "अभिज्ञावचने०"ले लृट् पाएको थियो, "न यदि"ले निषेध भयो, "बाधकाभावे०" लगाएर "अनद्यतने०"ले लङ् लकार भयो, 'अभुञ्ज्महि' भयो । "न यदि"ले निषेध नभएको भए 'भोक्ष्यामहे' हुने थियो ।

**लडिति**– स्म शब्दको योगमा परोक्ष अनद्यतन भूतकालमा लट् लकार होस् । यो सूत्र **"परोक्षे लिट्"**को अपवाद हो ।

**यजतिस्मेति**– यजति स्म युधिष्ठिरः (युधिष्ठिरले यज्ञ गरे) यहाँ स्म शब्दको योग हुनाले **"परोक्षे लिट्"**ले पाएको लिट्लाई बाधेर "लट् स्मे"ले लट् भयो, 'यजति' भयो । स्म शब्दको योग नभएमा लिट् भएर 'इयाज' यस्तो रूप हुन्छ ।

**स्म** शब्दको योगमा लिट्का विषयमा लट् लकारको प्रयोग अति प्रसिद्ध छ ।

**वर्तमानेति**– वर्तमान कालमा जो प्रत्यय कहिएका छन् । ती प्रत्ययहरू वर्तमानकालको सामीप्य बुझिँदामा भूतमा र भविष्यत् कालमा विकल्पले होऊन् ।

**कदा आगतोऽसि ?** (कहिले आयौ ?) यो प्रश्न हो । आगमन क्रिया भैसकेकोले भूतकालिक छ । यहाँ उत्तर पनि भूतकालिक नै हुनुपर्ने, तर भूतकाल वर्तमानको नजिकै छ । उत्तर दिँदा वर्तमानकालको सामीप्य बुझिएकोले "वर्तमानसामीप्ये०"ले लुङ्लाई बाधेर गम् धातुदेखि वर्तमानवत् लट् लकार विकल्पले भयो, अयमागच्छामि (यी आउँदै छु) भयो । लट् नभएको पक्षमा लुङ् भयो, अयमागमम् (यी आएँ) भयो ।

**कदा गमिष्यसि ?** (कहिले जाउला ?) यो प्रश्न भविष्यत्कालविषयक छ । यहाँ उत्तर पनि भविष्यत्कालिक नै हुनुपर्ने, तर वर्तमानकालका नजीकैको भविष्यत्काल बुझिएको हुनाले गम् धातुदेखि "वर्तमान सामीप्ये०"ले वर्तमानवत् प्रत्यय लट् लकार विकल्पले भयो, एष गच्छामि (यी जाँदैछु) भयो । लट् नभएको पक्षमा एष गमिष्यामि (यी हिंडे) भयो ।

**हेतुहेतुमतोरिति**– हेतु र हेतुमद्भाव अर्थमा रहेका क्रियालाई कहने दुवै धातुदेखि लङ् लकार विकल्पले होस् भविष्यत्कालमा । यहाँ यौटा क्रिया हेतु अर्को क्रिया हेतुमान् हुन्छ दुवै क्रियादेखि लिङ् हुन्छ ।

कृष्णं नमेच्चेत् सुखं यायात् (कृष्णलाई नमस्कार गर्ला त सुख पाउला) यहाँ नमस्कार गर्ने क्रिया सुख पाउनुको कारण छ, अतः हेतु र हेतुमद्भाव अर्थ बुझिन्छ । हेतु क्रियाबोधक

कृष्णं नंस्यति चेत्सुखं यास्यति । **वा**.(भविष्यत्येवेष्यते ।) नेह, हन्तीति पलायते ॥ विधिनिमन्त्रणेति लिङ् । विधि: प्रेरणं भृत्यादेर्निकृष्टस्य प्रवर्तनम् । यजेत ॥ निमन्त्रणं नियोगकरणम्, आवश्यके श्राद्धभोजनादौ दौहित्रादेः प्रवर्तनम् । इह भुञ्जीत ॥ आमन्त्रणं कामचारानुज्ञा । इहासीत ॥ अधीष्टं सत्कारपूर्वको व्यापारः । पुत्रमध्यापयेद्भवान् ॥ संप्रश्नः संप्रधारणम् । किं भो वेदमधीयीय उत तर्कम् ? प्रार्थनं याच्ञा । भो भोजनं लभेय । एवं लोट् ॥

## इति लकारार्थप्रक्रिया ॥

## इति तिङन्तं समाप्तम् ॥

---

'नम्'धातु, हेतुमत् क्रियाबोधक 'या'धातु दुवैदेखि "लृट शेषे च"लाई बाधेर लिङ् लकार भयो, 'नमेत्', 'यायात्' भयो । लिङ् नभएका पक्षमा "लृट् शेषे च"ले लृट् लकार भयो, 'कृष्णं नंस्यति चेत् सुखं यास्यति' भयो ।

**(वा.) भविष्यतीति**- यो सूत्रले लिङ् भविष्यत्कालमा मात्र इष्ट छ । अतः यहाँ हुँदैन- हन्तीति पलायते (मार्छ भनेर भाग्छ) यहाँ भाग्नु क्रियाको हेतु मार्नु क्रिया छ र हेतुहेतुमद्भाव अर्थ बुझिन्छ, तर वर्तमानकाल हुनाले "हेतुहेतुमतोर्लिङ्"ले लिङ् भएन ।

**विधिनिमन्त्रणेति**- विधि, निमन्त्रण, आमन्त्रण, अधीष्ट, संप्रश्न र प्रार्थना अर्थमा लिङ् हुन्छ ।

**विधिरिति**- विधि भनेको प्रेरणा हो । अर्थात् आफूले मान्नु नपर्ने नोकर आदिलाई काममा लगाउनु हो । जस्तै- 'यजेत' (यज्ञ गरोस्) यहाँ प्रेरणा अर्थमा लिङ् लकार भयो । अहरहः सन्ध्यामुपासीत यहाँ 'उपासीत' यो पनि विधि अर्थमा लिङ् भएको हो ।

**निमन्त्रणमिति**- निमन्त्रण भनेको निम्ता गर्नु हो, अर्थात् आवश्यक श्राद्ध भोजन आदिमा दौहित्र (छोरीका छोरा) आदिलाई प्रवृत्त गराउनु हो । जस्तै इह भुञ्जीत- (यहाँ भोजन गर्नुहोला) यहाँ निमन्त्रण अर्थमा लिङ् भयो ।

**आमन्त्रणमिति**- आमन्त्रण भनेको इच्छा अनुसारको अनुज्ञा हो निमन्त्रणामा जानु आवश्यक छ, आमन्त्रणामा स्वेच्छया जान पनि सकिन्छ नजान पनि सकिन्छ ।

जस्तै- इह आसीत (यहाँ भरसक आउनु होला, यहाँ भरसक शब्दको अर्थ हुन्छ । फुर्सद नभए न आए पनि केही विग्रँदैन)

**अधीष्टमिति**- अधीष्ट भनेको सत्कारपूर्वक गरिने व्यापार हो । अर्थात् आदरपूर्वक काममा लगाउनु हो । जस्तैः- पुत्रमध्यापयेद् भवान् हजूरले (मेरो छोरालाई पढाइदिनु होस्, हुनेछ) यहाँ अधीष्ट अर्थमा ण्यन्त इङ् धातु- 'अध्यापि'देखि लिङ् लकार भयो ।

**संप्रश्न इति**- संप्रश्न भनेको संप्रधारण हो । संप्रधारण भनेको निश्चयका निमित्त लिइने परामर्श हो । जस्तै- किं भो वेदमधीयीय उत तर्कम् (गुरुदेव ! म वेदशास्त्र पढुँ कि तर्कशास्त्र) यहाँ निश्चय गर्न गुरुसँग सोधिएको हुनाले संप्रश्न बुझिन्छ र 'अधि+इ'देखि लिङ् लकार भयो ।

**प्रार्थनमिति**- प्रार्थन भनेको याच्ञा अर्थात् माग्नु हो । जस्तै- भो भोजनं लभेय (हजूर भोजन पाउँला कि ?) यहाँ प्रार्थन अर्थमा लभ् धातुदेखि लिङ् भयो । यस्तै उक्त विध्यादि अर्थमा लोट् पनि हुन्छ ।

**लकारार्थ प्रक्रिया सकियो ।**

**तिङन्तप्रक्रिया सकियो ।**

-------------

## अथ कृदन्तप्रकरणम्

### तत्रादौ कृत्यप्रक्रिया

**७६३. धातोः ३।१।९१॥**

आतृतीयाध्यायसमाप्तेर्ये प्रत्ययास्ते धातोः परे स्युः । कृदतिङिति कृत्सञ्ज्ञा ॥

**७६४. वासरूपोऽस्त्रियाम् ३।१।९४॥**

अस्मिन्धात्वधिकारेऽसरूपोऽपवादप्रत्यय उत्सर्गस्य बाधको वा स्यात् स्त्र्यधिकारोक्तं विना ॥

---

**अब कृदन्तमा कृत्यप्रक्रिया शुरू हुन्छ ।**

"अर्हे कृत्यतृचश्च" र "शकि लिङ् च" यी दुई सूत्रले योग्य अथवा शक्य, अर्थमा कृत्यप्रत्यय हुन्छन् ।

**धातोरिति**– तेस्रो अध्याय समाप्ति नहुञ्जेलसम्मका प्रत्ययहरू धातुदेखि पर होऊन् । (यो अधिकार सूत्र हो)

यो सूत्रदेखि लिएर तेस्रो अध्याय समाप्ति नहुञ्ज्यालसम्म जति प्रत्यय कहिन्छन् ती धातुदेखि पर हुन्छन् ।

**कृदिति**– कृदतिङ् भन्ने सूत्रले कृत्संज्ञा हुन्छ ।

**वाऽसरूप इति**– यो "धातोः" भन्ने सूत्रको अधिकारमा सरूपैभिन्न अपवाद प्रत्यय, सामान्य शास्त्रको विकल्पले बाधक होस्, "स्त्रियां क्तिन्" भन्ने सूत्रका अधिकारमा बताइएका प्रत्ययलाई छोडेर ।

**यसको आशय**– "तव्यत्तव्यानीयरः" यो सामान्य सूत्र हो यसका बाधक अपवाद सूत्र हुन् "अचो यत्" "ऋहलोर्ण्यत्" आदि । चि धातुदेखि यत् प्रत्यय वैकल्पिक हुन्छ र असरूप हुनाले तव्यत् आदि प्रत्यय पनि हुन्छन् र चेयः, चेतव्यः, चयनीयः सबै रूप बन्दछन् । कृधातुदेखि "ऋहलोः०"ले ण्यत् विकल्पले हुन्छ र कार्यम्, कर्तव्यम् आदि रूप पनि बन्दछन् । "नानुबन्धकृतमसारूप्यम्" यो परिभाषा लगाएर अनुबन्ध विना 'य' नै दुवैमा बाँकी रहने हुँदा ण्यत् र यत् सरूप प्रत्यय हुन् । अतः कृ धातुदेखि "अचो यत्"लाई नित्य बाधेर "ऋहलोः०"ले ण्यत् हुन्छ । पुनः "अचो यत्"ले यत् हुँदैन । तर असरूप हुनाले तव्यत् आदि प्रत्यय हुन्छन् ।

जस्तै 'गोदः' यहाँ "कर्मण्यण्"लाई नित्य बाधेर "आतोऽनुपसर्गे कः"ले कप्रत्यय हुन्छ । पुनः अण् हुँदैन र 'गोदायः' यो रूप हुँदैन । त्यस्तै "इगुपधज्ञाप्री०"ले "ण्वुल्तृचौ"लाई बाधेर कप्रत्यय भए पनि सरूप भिन्न हुनाले ण्वुल्, तृच् प्रत्यय पनि हुन्छन् र क्षिपः, क्षेपकः, क्षेप्ता यी रूप सिद्ध हुन्छन् । "स्त्रियां क्तिन्"को अधिकारमा भने सरूप भिन्न भएपनि अपवाद प्रत्यय नित्यबाधक हुन्छ । जस्तै चिकीर्ष, पुत्रकाम्य धातुदेखि क्तिन् प्रत्ययलाई बाधेर "अ प्रत्ययात्"ले अप्रत्यय नित्य हुन्छ र चिकीर्षा, पुत्रकाम्या हुन्छ । "गुरोश्च हलः"ले पूज, अर्च, कुन्थ्, नन्द आदि धातुदेखि पनि अप्रत्यय हुन्छ र पूजा अर्चा, कुन्था, नन्दा आदि रूप हुन्छन् । यी धातुदेखि क्तिन् प्रत्यय हुँदैन ।

**७६५. कृत्याः ३।१।९५।।**

ण्वुल्तृचावित्यतः प्राक् कृत्यसंज्ञाः स्युः ॥

**७६६. कर्तरि कृत् ३।४।६७।।**

कृत्प्रत्ययः कर्तरि स्यात् । इति प्राप्ते

**७६७. तयोरेव कृत्यक्तखलर्थाः ३।४।७०।।**

एते भावकर्मणोरेव स्युः ॥

**७६८. तव्यत्तव्यानीयरः ३।१।९६।।**

धातोरेते प्रत्ययाः स्युः । एधितव्यम्, एधनीयं त्वया । भावे औत्सर्गिकमेकवचनं

---

**कृत्या इति**– "ण्वुल्तृचौ" भन्ने सूत्रदेखि पूर्वका प्रत्ययहरू कृत्यसंज्ञक होऊन् । 'ण्वुल्तृचौ'देखि पूर्व तर्फका प्रत्ययहरूलाई यो सूत्रले कृत्यसंज्ञा हुन्छ । "कृदतिङ्"ले कृत्संज्ञा पनि हुन्छ । कृत्यसंज्ञक प्रत्यय जम्मा ७ वटा छन् । तव्यत्, तव्य, अनीयर्, यत्, ण्यत्, क्यप् र केलिमर् ।

**कर्तरीति**– कृत्संज्ञक प्रत्यय कर्ता अर्थमा होस् यो सूत्रले कर्तामा पाएमा-

**तयोरिति**– कृत्यसंज्ञक प्रत्यय, क्तप्रत्यय र खल् प्रत्ययको अर्थमा हुने प्रत्यय अकर्मक धातुदेखि भाव अर्थमा, सकर्मक धातुदेखि कर्म अर्थमा मात्र होऊन् ।

**तव्यदिति**– धातुदेखि तव्यत्, तव्य, अनीयर् प्रत्यय भाव र कर्म अर्थमा होऊन् । तव्यत् प्रत्ययको तकार इत्संज्ञक छ अतः तव्यत् र तव्य यी दुवै प्रत्ययमा रूप समान हुन्छन् । यौटै रूप भए पनि तकारको इत्संज्ञा गरेर भएको रूपको स्वरप्रकरणमा भिन्नता देखिन्छ । तित् स्वरित हुन्छ । अनीयर्को रेफ पनि इत्संज्ञक छ । कृत्य प्रत्यय योग्य र शक्य अर्थमा हुन्छन् । "अर्हे कृत्यतृचश्व", "शकि लिङ् च" यी दुई सूत्रले योग्य र शक्य अर्थमा कृत्यप्रत्यय हुन्छ भनेका छन् ।

कृदन्त, तद्धित, एकशेष, समास, सनाद्यन्त धातु स्वरूप यी पाँच वृत्ति छन् । वृत्तिको अर्थ बुझाउने वाक्यलाई विग्रह भन्दछन् । यो कुरा केवल समास प्रकरणमा स्पष्ट गरेको छ । कृदन्त हुनाले यहाँ विग्रह रहन्छ । विग्रह राख्दा जुन धातुदेखि कृत्य प्रत्यय गर्ने हो त्यो धातुको तुमुन् प्रत्ययान्त रूपको अगाडि शक्यम् अथवा योग्यम् राख्नु पर्छ । जस्तै एधितुं योग्यं, शक्यं वा-एधितव्यम्, एधनीयम् इत्यादि ।

**एधितव्यम् त्वया**– एधितुं योग्यम् शक्यं, वा यस विग्रहमा एध् धातुदेखि "तव्यत्तव्यानीयरः" ले कर्तामा तव्यत् प्रत्यय पाएकोमा "तयोरेव०"ले एध् धातु अकर्मक हुनाले भाव अर्थमा भयो, तकारको इत्संज्ञा लोप भयो, इट् आगम भयो, 'एधितव्य' भयो, कृदन्तत्वात्प्रातिपदिकसंज्ञा भयो, भावमा लिङ्ग र संख्या नहुनाले "ङ्याप्प्रातिपदिकात्" लाएर औत्सर्गिक एकवचन सु आयो, नपुंसक लिङ्ग भयो, 'एधितव्यम्' सिद्ध भयो । एधितव्यं त्वया (तिमीले बढ्नु योग्य छ, अथवा शक्य छ अर्थात् सकिन्छ) भावमा प्रत्यय भएकोले अनुक्त कर्तामा तृतीया भयो, यहाँ पनि 'भूयते'मा जस्तै त्वया, मया, अन्यैश्च 'एधितव्यम्' यस्तो हुन्छ । तव्य प्रत्ययमा पनि यही रूप हुन्छ ।

**एधनीयं त्वया**– एधितु योग्यं, शक्यं वा यस विग्रहमा पूर्ववत् अनीयर् प्रत्यय भयो, अनुबन्धलोप भयो, औसर्गिक एक वचन र नपुंसक लिङ्ग भयो, 'एधनीयम्' भयो, अनुक्त कर्ता युष्मद् शब्ददेखि तृतीया भयो, 'एधनीयं त्वया', (तिमीले बढ्नु योग्य छ अथवा शक्य छ ।) यस्तै यहाँ पनि- 'त्वया मया अन्यैः एधनीयम्' यस्तो प्रयोग हुन्छ । कर्तामा एकवचन, द्विवचन, बहुवचन जे राखे पनि धातुको रूपमा एकवचन र नपुंसक लिङ्ग हुन्छ । यही कुरा तलको पङ्क्तिमा भनिएको छ-

**भाव इति**– भावमा औत्सर्गिक एकवचन र नपुंसक लिङ्ग हुन्छ ।

---

क्लीबत्वं च । चेतव्यश्चयनीयो वा धर्मस्त्वया । **वा**. (केलिमर उपसंख्यानम्) पचेलिमा माषाः । पक्तव्या इत्यर्थः । भिदेलिमाः सरलाः । भेत्तव्या इत्यर्थः । कर्मणि प्रत्ययः ॥

**७६९. कृत्यल्युटो बहुलम् ३।३।११३॥**

कचित्प्रवृत्तिः कचिदप्रवृत्तिः कचिद्विभाषा कचिदन्यदेव ।
विधेर्विधानं बहुधा समीक्ष्य चतुर्विधं बाहुलकं वदन्ति ॥१॥

---

अकर्मक एध् धातुदेखि भावमा प्रत्यय देखाएपछि सकर्मक चि धातुदेखि कर्ममा प्रत्यय भएको रूप तल प्रस्तुत गरिएको छ । चेतव्यश्चयनीयो वा धर्मस्त्वया- (तिमीले धर्म सञ्चय गर्न योग्य वा शक्य छ ।) चेतुं योग्यः, शक्यो वा यस अर्थमा चि धातुदेखि कर्ममा तव्यत् प्रत्यय भयो, यो धातु अनुदात्त हुनाले इट् आगमको निषेध गुण भयो, 'चेतव्य' शब्द बन्यो । सु आयो, 'चेतव्यः' सिद्ध भयो । अनीयर्प्रत्यय भएमा गुण, अय् आदेश भयो, सु आयो, 'चयनीयः' सिद्ध भयो । यसको विशेष्य- धर्म, पुलिङ्ग, एकवचन हुनाले चेतव्यः, चयनीयः यहाँ पनि पुंलिङ्ग एकवचन भयो । धर्म दुई तीन आदि धेरै हुन सक्छन् । जब धर्म दुई हुन्छन् तव 'चेतु, योग्यौ, शक्यौ, वा' 'चेतव्यौ चयनीयौ वा धर्मौ त्वया' यस्तो प्रयोग हुन्छ । बहुत्व बुझिएमा- 'चेतव्याश्चयनीया वा धर्मास्त्वया' यस्तो प्रयोग हुन्छ । यहाँ कर्मबोधक अनुक्तकर्ता यौटै छ र कर्तामा एकवचन हुन्छ । धर्म मात्र एक दुई र बहुछन् । कर्ममा प्रत्यय हुने हुनाले कर्म अनुसार लिङ्ग विभक्ति र एकवचन, द्विवचन र बहुवचन हुन्छन् । उदाहरणार्थ यहाँ प्रथमाविभक्ति मात्र देखाइएको छ 'चेतव्यं धर्मम्', 'चेतव्येन धर्मेण' आदि रूपहरूको प्रयोग पनि गुरुमुखबाट सिक्नु पर्दछ ।

विशेष्यको लिङ्ग अनुसार विशेषणको लिङ्ग हुने हुनाले विशेष्य नपुंसक लिङ्गी भएमा- 'चेतव्यं पुष्पम्' स्त्रीलिङ्गी भएमा- 'चेतव्या सृतिः' इत्यादि पनि ऊह गर्नु पर्दछ ।

**केलिमर इति** (**वा**.)– भाव अर्थ र कर्म अर्थमा केलिमर् प्रत्यय होस् भन्नु । ककार र रेफको इत्संज्ञा र लोप हुन्छ, एलिम बाँकी रहन्छ ।

**पचेलिमा माषाः**– पक्तुं योग्याः शक्या वा (मासहरू पकाउन योग्य वा शक्य छन् ।) यस अर्थमा पच् धातुदेखि कर्ममा केलिमर् प्रत्यय भयो, 'पचेलिम' शब्द बन्यो । यसको विशेष्य भाषामा प्रथमाको बहुवचन हुनाले पचेलिम शब्ददेखि पनि प्रथमाको बहुवचन जस आयो । 'पचेलिमा माषाः' भयो । यहाँ कर्ता दिएको छैन, कर्तामा तृतीयाविभक्ति हुन्छ । कर्ता राखेमा 'त्वया मया अन्यैश्च पचेलिमा माषा' यस्तो प्रयोग हुन्छ ।

**पक्तव्येति**– पकाउन योग्य वा शक्य छन् भन्ने अर्थ हो ।

**भिदेलिमाः सरलाः**– (चिर्न योग्य सल्लाहरू) भेत्तुं योग्या यसअर्थमा भिद् धातुदेखि कर्ममा केलिमर् प्रत्यय भयो, 'भिद्+एलिम' भयो, कित्वात् लघूपधगुणको निषेध भयो, 'भिदेलिम' शब्द भयो, यसको विशेष्य सरल शब्द बहुवचनान्त हुनाले भिदेलिम शब्ददेखि प्रथमाको बहुवचन जस् आयो, 'भिदेलिमाः' सिद्ध भयो ।

**कर्मणीति**– पचेलिमा भिदेलिमा यहाँ केलिमर् प्रत्यय कर्ममा भएको छ । कसैको मतमा यो केलिमर् प्रत्यय कर्मकर्तामा हुन्छ भनिएको छ[११५] ।

**कृत्येति**– कृत्यसंज्ञक प्रत्यय र ल्युट् प्रत्यय बहुलप्रकारले हुन्छ । बहुलप्रकार भनेको के हो त्यो यस पद्यबाट स्पष्ट गरिन्छ ।

**क्वचिदिति**– कहीं प्रवृत्ति हुनु, कही प्रवृत्ति नहुनु, कही विकल्पले हुनु, कहीं अर्कै प्रकार हुनु,

---

११५ वृत्तिकारस्तु "कर्मकर्तरि चायमिष्यते" इत्याह तद् भाष्यविरुद्धम् इति सिद्धान्तकौमुद्याम् ।

स्नात्यनेनेति स्नानीयं चूर्णम् । दीयतेऽस्मै दानीयो विप्रः ॥

**७७०. अचो यत् ३।१।९७॥**

अजन्ताद्धातोर्यत् स्यात् । चेयम् ॥

**७७१. ईद्यति ६।४।६५॥**

यति परे आत ईत्स्यात् । देयम् । ग्लेयम् ॥

**७७२. पोरदुपधात् ३।१।९८॥**

पवर्गान्ताददुपधाद्यत्स्यात् । ण्यतोऽपवादः । शप्यम् । लभ्यम् ॥

---

विधि शास्त्रको विधान अनेक प्रकारको विचार गरेर चार प्रकारको बाहुलक हुन्छ भन्दछन् । पहिलो, दोस्रो र तेस्रोको उदाहरण खोज्नुपर्छ । यहाँ चौथो प्रकारको बाहुलकको उदाहरण वृत्तिकारले प्रस्तुत गरेका छन् ।

**स्नातीति**– स्नाति अनेन (नुहाउँछ यसले) यहाँ करण अर्थमा स्ना धातुदेखि "कृत्यल्युटो बहुलम्०"ले बाहुलकात् अनीयर् प्रत्यय भयो, 'स्नानीयम्' भयो । स्नानीय भनेको स्नानको साधन चूर्ण अर्थात् बुकुवा हो ।

**दीयत इति**– दीयते यस्मै (दिइन्छ जसलाई) यहाँ दा धातुदेखि संप्रदान अर्थमा अनीयर् प्रत्यय भयो र दानीय रूप बन्यो । दानीय भनेको दान दिन लायक सम्प्रदान ब्राह्मण हो ।

**अच इति**– अजन्त धातुदेखि यत् प्रत्यय होस् भाव र कर्म अर्थ बुझिंदामा ।

**चेयम्**– चेतुं योग्यम् (जम्मा गर्न योग्य) यस विग्रहमा चि धातुदेखि कर्ममा "अचो यत्"ले यत् प्रत्यय भयो, गुण भयो, चेय शब्द बन्यो, नपुंसक लिङ्गमा सु आयो, अम् भयो, 'चेयम्' **सिद्ध** भयो । यसको कर्म विशेष्य पुष्पम् इत्यादि हुन्छ ।

**जेयम्**– जेतुं योग्यम् (जित्न योग्य) भन्दा जिधातुदेखि "अचो यत्"ले यत् प्रत्यय भयो, पूर्ववत गुण आदि भयो, जेय शब्द बन्यो, सु आयो अम् भयो, 'जेयम्' सिद्ध भयो । यसको कर्म अथवा विशेष्य 'मनः' इत्यादि हुन्छ ।

**ईदिति**– यत् प्रत्यय पर भएमा आकारका स्थानमा दीर्घ ईकार होस ।

**देयम्**– दातुं योग्यम् (दिन योग्य) यस विग्रहमा दा धातेुखि "अचो यत्"ले कर्ममा यत् प्रत्यय भयो, "ईद्यति"ले दाका आकारका स्थानमा दीर्घ ईकार भयो, गुण भयो, सु आयो, अम् भयो, 'देयम्' सिद्ध भयो । यसको कर्म अथवा विशेष्य धनम् इत्यादि हुन्छ ।

**ग्लेयम्**– ग्लै धातुको ऐकारका स्थानमा यत् प्रत्ययको विवक्षामा "आदेच उपदेशे०"ले आत्व भयो, ग्लातुं योग्यम् यस विग्रहमा ग्ला धातुदेखि "अचो यत्"ले भावमा यत् प्रत्यय भयो, "ईद्यति"ले आकारका स्थानमा दीर्घ ईकार भयो, गुण भयो, 'ग्लेय' शब्द सिद्ध भयो । सु आयो, अम् भयो, 'ग्लेयम्' भयो । 'त्वया मया अन्यैश्च ग्लेयम्' यस्तो प्रयोग हुन्छ । भावमा प्रत्यय भएकोले क्लीबलिङ्ग र एकवचनमात्र मात्र हुन्छ । अर्थवशात् सकर्मक भएमा सबै लिङ्ग विभक्ति वचन विशेष्यका जस्तै हुन्छन् ।

**पोरिति**– पवर्ग अन्तमा हुने ह्रस्व अकार उपधामा हुने धातुदेखि भाव र कर्म अर्थमा यत्प्रत्यय होस् । यो सूत्र "ऋहलोर्ण्यत्"को अपवाद हो ।

**शप्यम्**– शप्तुं योग्यम् (गाली गर्न योग्य) यस अर्थमा "पोरदुपधात्"ले ण्यत्लाई बाधेर यत्प्रत्यय भयो, 'शप्+यत्' ,'शप्यम्' सिद्ध भयो ।

**लभ्यम्**– लब्धुं योग्यम् (पाउन योग्य) पूर्ववत् 'लभ्+यत्', 'लभ्यम्' सिद्ध भयो ।

**७७३. एतिस्तुशास्वृदृजुषः क्यप् ३।१।१०९॥**

एभ्यः क्यप् स्यात् ॥

**७७४. ह्रस्वस्य पिति कृति तुक् ६।१।७१॥**

इत्यः । स्तुत्यः ॥ **शासु** अनुशिष्टौ ॥

**७७५. शास इदङ्हलोः ६।४।३४॥**

शास उपधाया इत्स्यादङि हलादौ क्ङिति च । शिष्यः । वृत्यः । आदृत्यः । जुष्यः ॥

**७७६. मृजेर्विभाषा ३।१।११३॥**

मृजेः क्यब्वा । मृज्यः ॥

---

अब यस्तै प्रकारले कृत्य प्रत्यय जति भाव र कर्ममा योग्यम्, शक्यम् अर्थमा हुन्छन् भन्ने स्मृतिमा राख्नु पर्दछ । प्रत्येक सूत्रमा भाव र कर्ममा भनेर बताइरहनु आवश्यक छैन । वाच्य अर्थ भाव र कर्म हुन्छ । बोध्य अर्थ योग्य र शक्य हुन्छ ।

**एतीति**- इण् धातु, स्तु धातु, शास् धातु, वृ धातु, दृ धातु, जुष् धातुदेखि क्यप् प्रत्यय होस्, उक्त अर्थमा । ककार र पकारको इत्सञ्ज्ञा, लोप हुन्छ ।

**ह्रस्वस्येति**– ह्रस्वको तुक् आगम होस् पित्, कृत्सञ्ज्ञक प्रत्यय पर भएमा ।

**इत्यः**– एतुं योग्यम् (जान योग्य) भन्दा इण् धातुदेखि "एतिस्तुशास्०"ले क्यप् प्रत्यय भयो, ककार पकारको इत्संज्ञा, लोप भयो, 'इ+य', भयो, यहाँ कित्त्वात्, इकारको गुणनिषेध भएपछि, **"ह्रस्वस्य** पिति०"ले तुक् आगम, उक्को इत्संज्ञा लोप भयो, कित्त्वात् इको अन्त्यतर्फ 'त' भयो, इत्य **शब्द** बन्यो । इत्य शब्ददेखि सु आयो, 'इत्यः' सिद्ध भयो । यसको कर्म अथवा विशेष्य मार्ग आदि हुन्छ ।

**स्तुत्यः**– स्तोतुं योग्यः (स्तुति गर्न योग्य) यस अर्थमा पूर्वसूत्रले क्यप् प्रत्यय भयो, 'स्तु+य' भयो, तुक् भयो, सु आयो, 'स्तुत्यः' सिद्ध भयो । यसको प्रयोग- स्तुत्यो विष्णुः (विष्णु स्तुति गर्न योग्य छन्)

**शासु** धातु अनुशासन गर्नु, आज्ञा दिनु, सिकाउनु अर्थमा छ ।

**शास इदिति**– शास् धातुका उपधाका स्थानमा इकार होस्, अङ् प्रत्यय पर भएमा र हल् आदिमा हुने कित् ङित् प्रत्यय पर भएमा ।

**शिष्यः**–शासितुं योग्यः (अनुशासन दिन योग्य) भन्दा "एतिस्तुशास्०"ले क्यप् प्रत्यय भयो, 'शास्+य' भयो, य प्रत्यय कित् हुनाले "शास इदङ्०"ले उपधाका आकारका स्थानमा इकार भयो, "शासिवसि०"ले षत्व भयो, शिष्य शब्द सिद्ध भयो । सु आयो, 'शिष्यः' भयो । प्रयोग- शिष्यो देवदत्तः (देवदत्त अनुशासन दिन योग्य छ ।) शिष्य शब्द छात्र अर्थमा रूढ पनि छ । 'छात्रान्तेवासिनौ शिष्ये' (अमरकोश)

**वृत्यः**– वरीतुं योग्यः (वरण गर्न लायक) यस अर्थमा वृ, क्यप्, तुक्, 'वृत्य', सु आयो, 'वृत्यः' सिद्ध भयो ।

**आदृत्यः**– ओदर्तुं योग्यः (आदर गर्न लायक) यस अर्थमा आदृ, क्यप्, तुक्, 'आदृत्य', 'आदृत्यः' सिद्ध भयो ।

**जुष्यः**– जोषितुं योग्यः (सेवा गर्न लायक) यस अर्थमा जुष्, क्यप्, 'जुष्य', सु आयो, 'जुष्यः' सिद्ध भयो ।

**मृजेरितिः**– मृज् धातुदेखि विकल्पले क्यप् प्रत्यय होस् ।

**मृज्यः**– मार्जितुं योग्यः, (शुद्ध गर्न योग्य) भन्दा मृज् धातुदेखि "मृजेर्विभाषा"ले क्यप् भयो, "मृजेर्वृद्धि"ले पाएको वृद्धि कित्त्वात् निषेध भयो, 'मृज्य', सु आयो, 'मृज्यः' सिद्ध भयो ।

**७७७. ऋहलोर्ण्यत् ३।१।१२४॥**

ऋवर्णान्ताद्धलन्ताच्च धातोर्ण्यत् । कार्यम् । हार्यम् । धार्यम् ॥

**७७८. चजोः कु घिण्ण्यतोः ७।३।५२॥**

चजोः कुत्वं स्याद् घिति ण्यति च परे ॥

**७७९. मृजेर्वृद्धिः ७।२।११४॥**

मृजेरिको वृद्धिः सार्वधातुकार्धधातुकयोः । मार्ग्यः ॥

**७८०. भोज्यं भक्ष्ये ७।३।६९॥**

भोग्यमन्यत् ॥

इति कृत्यप्रक्रिया ॥

---

**ऋहलोरिति–** ऋवर्ण अन्तमा हुने धातु र हलन्त धातुदेखि ण्यत् प्रत्यय होस् ।

**कार्यम्–** कर्तुं योग्यम् (गर्न योग्य) भन्दा कृ धातुदेखि "ऋहलोः०"ले ण्यत् प्रत्यय भयो, "अचो ञ्णिति"ले वृद्धि भयो, सु आयो, 'कार्यम्' सिद्ध भयो । यस्तै प्रकारले हृ धातुदेखि ण्यत् प्रत्यय भयो, 'हार्यम्', धृ धातुदेखि ण्यत् प्रत्यय भयो, 'धार्यम्' सिद्ध भयो ।

**चजोरिति–** चकार र जकारका स्थानमा कुत्व होस्, घित्प्रत्यय र ण्यत्प्रत्यय पर भएमा ।

**मृजेरिति–** मृज् धातुका इक्का स्थानमा वृद्धि होस्, सार्वधातुक र आर्धधातुक प्रत्यय पर भएमा ।

**मार्ग्यः–** मार्जितुं योग्यः (शुद्ध गर्न योग्य) भन्दा "मृजेर्विभाषा"ले क्यप् प्रत्यय नभएको पक्षमा "ऋहलोर्ण्यत्"ले ण्यत् प्रत्यय भयो, "मृजेर्वृद्धिः"ले ऋकारका स्थानमा आर्वृद्धि भयो, सु आयो, 'मार्ग्यः' सिद्ध भयो ।

**भोज्य मिति–** भक्षण गर्न योग्य पदार्थ बुझिँदामा भुज् धातुदेखि भोज्यम् । यो रूप निपातन गरिन्छ ।

**भुज्** धातुका खानु र पालन गर्नु दुई अर्थ छन् । खानु अर्थमा "चजोः कुः"ले कुत्व हुँदैन भन्ने यो सूत्रको आशय हो ।

**भोज्यम्–** भोक्तुं योग्यम् (खान योग्य) भन्दा भुज्धातु "ऋहलोः"ले ण्यत् भयो, गुण भयो, "भोज्यं भक्ष्ये" लाएर कुत्वको अभाव निपातन भयो, सु आयो, 'भोज्यम्' सिद्ध भयो ।

**भोग्यमन्यदिति–** खानु बाहेक अरू अर्थमा जकारको कुत्व भएर 'भोग्यम्' यस्तो रूप नै हुन्छ ।

**भोग्यम्–** भोक्तुं योग्यम् (पालन गर्न अथवा भोग गर्न योग्य) भन्दा ण्यत्, गुण, कुत्व, भयो, सु आयो, 'भोग्यम्' सिद्ध भयो ।

**कृत्यप्रक्रिया समाप्त भयो ।**

---

## अथ पूर्वकृदन्तम्

**७८१. ण्वुल्तृचौ ३।१।१३३॥**

धातोरेतौ स्तः। कर्तरि कृदिति कर्त्रर्थे॥

**७८२. युवोरनाकौ ७।१।१॥**

यु वु एतयोरनाकौ स्तः। कारकः। कर्ता॥

**७८३. नन्दिग्रहिपचादिभ्यो ल्युणिन्यचः ३।१।१३४॥**

नन्द्यादेर्ल्यु, ग्रह्यादेर्णिनिः, पचादेरच् स्यात्। नन्दयतीति नन्दनः। जनमर्दयतीति जनार्दनः।

---

**अब पूर्वकृदन्त शुरू गरिन्छ।**

**ण्वुल्तृचाविति–** धातुदेखि ण्वुल् र तृच् प्रत्यय होऊन् कर्ता अर्थमा।

**कर्तरीति–** "कर्तरि कृत्" भन्ने सूत्रले ण्वुल् र तृच् कर्तामा हुन्छन्। यस्तै अरू प्रत्यय पनि कर्तामा नै हुन्छन्।

**युवोरिति–** अनुनासिक यु र वुका स्थानमा अन र अक आदेश होऊन्।

**कारकः–** करोति (गर्छ) यस विग्रहमा कृ धातुदेखि कर्ता अर्थमा "ण्वुल् तृचौ"ले ण्वुल् प्रत्यय भयो, णकार र लकार इत्संज्ञा लोप, 'कृ+वु' भयो, "युवोरनाकौ"ले वुका स्थानमा अक भयो, "स्थानिवदादेशो०" लाएर वु णित् हुनाले कृका ऋकारका स्थानमा आर्वृद्धि भयो, 'कारक', सु आयो, 'कारकः' सिद्ध भयो।

**कर्ता–** करोति (गर्छ) यस विग्रहमा कर्ता अर्थमा तृच् प्रत्यय भयो, चकारको इत्संज्ञा लोप भयो, कृका ऋकारका स्थानमा "सार्वधातुकार्ध०"ले गुण, कर्तृ, सु आयो, 'कर्ता' सिद्ध भयो।

**नन्दीति–** नन्दि आदि धातुदेखि ल्यु, ग्रह् आदि धातुदेखि णिनि, पचादि धातुदेखि अच् प्रत्यय होस्। यहाँ ल्युका 'यु', णिनिको 'इन्' अच्को 'अ' बाँकी रहन्छ। अरू वर्ण इत्संज्ञा भएर लोप हुन्छन्। णिनिको बाँकी इन् णित् हुनाले त्यो पर भएमा पूर्व अच्का स्थानमा वृद्धि हुन्छ। "कर्तरि कृत्" लाएर यी तीनै प्रत्यय कर्तामा हुन्छन्।

**नन्दनः–** नन्दयति (खुशी पार्छ) यस विग्रहमा ण्यन्त, नन्दि धातुदेखि "नन्दिग्रहि०"ले ल्यु भयो, "लशक्व०"ले लको इत्संज्ञा लोप भयो, 'यु' बाँकी रह्यो। युका स्थानमा "युवोरनाकौ"ले अन भयो, 'नन्दि+अन' भयो, "णेरनिटि"ले णिको लोप भयो, 'नन्दन' सु आयो, 'नन्दनः' सिद्ध भयो।

**जनार्दनः–** जनमर्दयति [११६] (जन्मलाई विच्छेद गरिदिन्छन् अर्थात् मुक्ति दिन्छन्) यस विग्रहमा 'जन+ङस्' उपपद हुने अर्दि धातुदेखि "नन्दिग्रहि०"ले ल्यु प्रत्यय भयो, युका स्थानमा अन, "णेरनिटि"ले णिलोप, भएर 'जन+ङस्+अर्दन' भएपछि समास, विभक्तिलोप, दीर्घ भयो, 'जनार्दन', सु आयो,

---

११६ जननम्, जनः। भावे घञ् "जनिवध्योश्च" इति वृद्धिनिषेधः। जनम्, जन्म अर्दयति इति जनार्दनः इति भानुजिदीक्षितः।

लवणः । ग्राही । स्थायी । मन्त्री । पचादिराकृतिगणः ॥

**७८४. इगुपधज्ञाप्रीकिरः कः ३।१।१३५॥**

एभ्यः कः स्यात् । बुधः । कृशः । ज्ञः । प्रियः । किरः ॥

**७८५. आतश्चोपसर्गे ३।१।१३६॥**

प्रज्ञः । सुग्लः ॥

---

'जनार्दनः' सिद्ध भयो । यहाँ जन शब्द जन् धातुदेखि भाव अर्थमा घञ् प्रत्यय भएर 'जन्+अ' भएपछि "जनिवध्योश्च"ले वृद्धि निषेध भएर बनेको हो । अतः जन्मनु अथवा जन्म अर्थमा छ ।

**लवणः (नुन)**– लुनाति (काट्छ) यस विग्रहमा लू धातुदेखि "नन्दिग्रहि०"ले ल्यु प्रत्यय भयो, युका स्थानमा अन आदेश, गणपाठमा णत्व निपातन गरेकोले णत्व भयो, 'लवण' कृदन्तत्वात् सु आयो, 'लवणः' सिद्ध भयो ।

**ग्राही**– गृह्णाति (ग्रहण गर्दछ) यस अर्थमा ग्रह् धातुदेखि णिनि, "अत उपधायाः"ले वृद्धि, 'ग्राहिन्', सु आयो, 'ग्राही' सिद्ध भयो ।

**मन्त्री**– मन्त्रयति (सल्लाह दिन्छ) यस अर्थमा ण्यन्त मन्त्रि धातुदेखि णिनि, णिलोप, 'मन्त्रिन्' सु आयो, 'मन्त्री' सिद्ध भयो । "मन्त्री धीसचिवोऽमात्यः" (अमरकोश) ।

**स्थायी– (रहने, स्थिर)**– तिष्ठति (रहन्छ) यस अर्थमा "नन्दिग्रहि०"ले णिनि, "आतो युक्०"ले युक्आगम 'स्थायिन्' भयो, सु आयो, 'स्थायी' सिद्ध भयो ।

**पचः (पकाउने वाला)**– पचति (पकाउँछ) यस अर्थमा पच् धातुदेखि "नन्दिग्रहि०"ले अच् प्रत्यय भयो, पच भयो, सु आयो, 'पचः' सिद्ध भयो । पचादिगण आकृतिगण छ, अर्थात् शब्दका आकृति हेरेर पचादिगणभित्र मान्नु पर्छ । यहाँ गणपाठभित्रबाट केही शब्द मात्र दिइएको छ । नन्द्यादि, ग्रह्यादि र पचादि धातु र तिनबाट बन्ने सबै रूपहरू गणपाठबाट याद गर्नुपर्छ ।

**इगुपधेति**– इक् उपधामा हुने धातु ज्ञा धातु, प्री धातु र कृ धातुदेखि क प्रत्यय होस् । ककारको इत्संज्ञा लोप हुन्छ अ बाँकी रहन्छ ।

**बुधः(विद्वान्)**– बुध्यते (जान्दछ) यस अर्थमा बुध् धातुदेखि "इगुपध०"ले कप्रत्यय भयो, 'बुध्+अ' भयो, कित्वात् गुण भएन, बुध, सु आयो, रुत्व विसर्ग भयो, 'बुधः' सिद्ध भयो ।

**कृशः(दुब्लो)**– कृश्यति (दुब्लाउँछ) यस अर्थमा कृश् धातु उक्त सूत्रले क भयो, कित्वाद् गुण भएन सु आयो, रुत्व विसर्ग भयो, 'कृशः' सिद्ध भयो ।

**ज्ञः (विद्वान्)**– जानाति (जान्दछ) यस अर्थमा ज्ञा धातुदेखि क भयो, "आतो लोप इटि च"ले आकारको लोप भयो, 'ज्ञ', सु आयो, 'ज्ञः' सिद्ध भयो । "धीरो मनीषी ज्ञः" (अमरकोश)

**प्रियः(प्यारो)**– प्रीणाति (तृप्ति दिन्छ) यस अर्थमा प्री धातु "इगुपधज्ञाप्री०"ले क भयो, गुणनिषेध भएपछि इयङ् भयो, 'प्रिय', सु आयो, रुत्व विसर्ग भयो, 'प्रियः' सिद्ध भयो ।

**किरः(फ्याँक्नेवाला)**– किरति (फ्याँक्छ) यस अर्थमा कॄ धातुदेखि क "ॠत इद्धातोः"ले इर् भयोल सु आयो, रुत्व विसर्ग भयो, 'किरः' सिद्ध भयो ।

**आत इति**– उपसर्ग पूर्वमा हुने आकारान्त धातुदेखि क प्रत्यय होस् ।

**प्रज्ञः(प्रकृष्ट विद्वान्)**– प्रकर्षेण जानाति, (राम्रोसँग जान्दछ) यस अर्थमा प्र उपसर्ग पूर्वक ज्ञा धातुदेखि क भयो, "आतो लोप इटि च"ले आकारको लोप भयो, सु आयो, 'प्रज्ञः' सिद्ध भयो ।

**सुग्लः**– सुष्ठु ग्लायति (राम्रोसँग वैलाउँछ) यस अर्थमा सु उपसर्ग पूर्वक ग्ला ग्लै धातुदेखि क प्रत्यय भयो, "आतो लोप इटि च"ले आकारको लोप भयो, सु आयो, 'सुग्लः' सिद्ध भयो ।

**७८६. गेहे कः ३।१।१४४**

गेहे कर्तरि ग्रहेः कः स्यात् । गृहम् ॥

**७८७. कर्मण्यण् ३।२।१॥**

कर्मण्युपपदे धातोरण् प्रत्ययः स्यात् । कुम्भं करोतीति कुम्भकारः ॥

**७८८. आतोऽनुपसर्गे कः ३।२।३॥**

आदन्ताद्धातोरनुपसर्गात्कर्मण्युपपदे कः स्यात् । अणोऽपवादः । "आतो लोप इटि च" । गोदः । धनदः । कम्बलदः । अनुपसर्गे किम् ? गोसन्दायः ।

---

**गेह इति–** घर कर्ता भएमा ग्रह् धातुदेखि क प्रत्यय होस् ।

**गृहम् (घर)–** गृह्णति धान्यादिकम् (धान आदि ग्रहण गर्छ), यस विग्रहमा ग्रह् धातुदेखि "गेहे कः"ले क प्रत्यय भयो, 'ग्रह्+अ' यहाँ अ कित् हुनाले "ग्रहिज्या०"ले संप्रसारण भयो, गृह शब्द बन्यो, सु आयो, 'गृहम्' सिद्ध भयो । यो शब्द अर्धर्चादिगणभित्र हुनाले पुंलिङ्ग नपुंसक लिङ्ग दुवैमा रहन्छ । पुलिङ्गमा बहुवचनान्त हुन्छ । "गृहाः पुंसि च भून्येव" (अमरकोश)

**कर्मणीति–** कर्मबोधक सुबन्त उपपद भएमा धातुदेखि अण् प्रत्यय होस् । यहाँ "गतिकारकोपपदानां कृद्भिः सह समासवचनं प्राक्सुबुत्पत्तेः" (गति, कारक र उपपदको कृदन्तका साथ सुप् उत्पत्ति हुनुभन्दा पहिले समास हुन्छ ।) "कर्तृकर्मणोः०"ले कृदन्तको योगमा कर्ममा षष्ठी हुन्छ । कृ धातुदेखि कृत्प्रत्यय अण् ल्याउने विवक्षा छ । अतः कृत्प्रत्ययको योगमा विधान गरिने षष्ठी बुद्धिस्थ भैसकेको हुनाले कुम्भ ङस् पूर्वमा हुने कृ धातुदेखि नै अण् हुन्छ । यस्तै अन्यत्र पनि जान्नू ।

**कुम्भकारः(कुमाले)–** कुम्भं करोति (घडा बनाउँछ) यस विग्रहमा 'कुम्भ+ङस्' पूर्वमा हुने कृ धातुदेखि "कर्मण्यण्"ले अण् प्रत्यय भयो, 'कुम्भ+ङस्+कार', भयो, "उपपदमतिङ्"ले "गतिकारकोपपदानां०" यो परिभाषा लाएर कार शब्ददेखि सु आउनु भन्दा पहिले नै समास भयो, विभक्तिको लोप भयो, सु आयो, 'कुम्भकारः' सिद्ध भयो ।

**आत इति–** उपसर्ग पूर्वमा नहुने आकारान्त धातुदेखि कर्मबोधक सुबन्त उपपद भएमा क प्रत्यय होस् । यो अण्को अपवाद हो । आकारको लोप हुन्छ र गोदशब्द बन्दछ ।

**गोदः (गाई दिने व्यक्ति)–** गां ददाति (गाई दिन्छ) यस अर्थमा 'गो+ङस्' पूर्वमा हुने दा धातुदेखि "कर्मण्यण्"ले अण् पायो, त्यसलाई बाधेर "आतोऽनुपसर्गे कः"ले क प्रत्यय भयो, आकारको "आतो लोप इटि च"ले लोप भयो, 'गो+ङस्+द' भयो, उपपदसमास भयो, विभक्तिको लुक् भयो, सु आयो 'गोदः' सिद्ध भयो । यस्तै प्रकारले धनं ददाति यस अर्थमा 'धन+ङस्' पूर्वमा हुने दा धातुदेखि पूर्ववत् क प्रत्यय भयो, आकारको लोप भयो, समासादि भयो, 'धनदः' सिद्ध भयो। कम्बलम् ददाति यस अर्थमा 'कम्बल+ङस्' पूर्वमा हुने दा धातुदेखि क प्रत्यय भएपछि पूर्ववत् प्रक्रिया भयो, 'कम्बलदः' सिद्ध भयो ।

**अनुपसर्गे किमिति–** अनुपसर्गे किम् "आतोऽनुपसर्गे कः" यस सूत्रमा अनुपसर्गे किन भन्नु ? नभन्ने हो भने सूत्रको अर्थ होला 'आकारान्त धातुदेखि कर्म बोधक सुबन्त उपपद भएमा क प्रत्यय होस्,' यस्तो अर्थ भएपछि दोषजाला कहाँ ? गां सन्ददाति यस अर्थमा 'गो+ङस्' सम् पूर्वमा हुने दा धातुदेखि क प्रत्यय होला र 'गोसन्दः' यस्तो अनिष्ट रूप सिद्ध होला । सो नहोस् भनेर हामीले "अनुपसर्गे" भन्यौ अनुपसर्गे भनेपछि उपसर्गपूर्वमा नहुने आकारान्त धातुदेखि भन्ने अर्थ भयो । यहाँ उपसर्ग पूर्वमा हुने आकारान्त धातु छ र क प्रत्यय भएन, "कर्मण्यण्"ले अण् प्रत्यय भयो, 'गो+ङस्+सन्दा+अ', यहाँ "आतो युक्०"ले दा धातुको युक् आगम भयो, 'गो+ङस्+सन्दाय', यहाँ समास, विभक्ति लुक्, भयो, सु आयो 'गोसन्दायः' सिद्ध भयो । (गाईहरू राम्रोसँग दान गर्ने व्यक्ति)

**वा.**(मूलविभुजादिभ्यः कः) । मूलानि विभुजति मूलविभुजो रथः ।आकृतिगणोऽयम् । महीध्रः । कुध्रः ॥

**७८९. चरेष्टः ३।२।१६॥**

अधिकरणे उपपदे । कुरुचरः ॥

**७९०. भिक्षासेनादायेषु च ३।२।१७॥**

भिक्षाचरः । सेनाचरः । आदायेति ल्यबन्तम् । आदायचरः ॥

**७९१. कृञो हेतुताच्छील्यानुलोम्येषु ३।२।२०॥**

एषु द्योत्येषु करोतेष्टः स्यात् ॥

**७९२. अतः कृकमिकंसकुम्भपात्रकुशाकर्णीष्वनव्ययस्य ८।३।४६॥**

आदुत्तरस्यानव्ययस्य विसर्गस्य समासे नित्यं सादेशः करोत्यादिषु परेषु ।

---

**(वा.) मूलेति**– मूल विभुजादिगणपठित शब्दसिद्धिका निमित्त क प्रत्यय होस् ।

**मूलविभुजः(रथ)**– मूलानि विभुजति (रूखका जराहरू भाँच्छ), यस विग्रहमा 'मूल+ङस्+वि' पूर्वमा हुने भुज् धातुदेखि "कर्मण्यण्"ले अण् पायो, त्यसलाई बाधेर "मूलविभुजादिभ्यः कः"ले क प्रत्यय भयो, कित्वात्, गुणनिषेध, समास, विभक्तिलुक्, स्वादिकार्य भयो, 'मूलविभुजः' सिद्ध भयो ।

**महीध्रः(पर्वत)**– महीं धरति (पृथ्वीलाई धारण गर्छ) यस अर्थमा 'मही+ङस्' पूर्वमा हुने धृ धातुदेखि "कर्मण्यण्"लाई बाधेर "मूलविभुजादिभ्यः कः"ले कप्रत्यय भयो, समास, विभक्तिलुक्, कित्वाद्, गुणनिषेध भयो, यण् भयो,, सु आयो, 'महीध्रः' सिद्ध भयो ।

**कुध्रः(पर्वत)**– कुं(पृथ्वीं) धरति (पृथ्वीलाई धारण गर्छ) यस अर्थमा 'कु+ङस्' पूर्वक धृ धातुदेखि पूर्ववत् क प्रत्यय समासादिकार्य भयो, 'कुध्रः' सिद्ध भयो ।

**चरेरिति**– अधिकरणबोधक सुबन्त उपपद भएमा चर् धातुदेखि ट प्रत्यय होस् ।

**कुरुचरः**(कुरु देशमा विचरण गर्ने व्यक्ति विशेष)– कुरुषु चरति (कुरुदेशमा विचरण गर्छ) यस अर्थमा 'कुरु+सुप्' पूर्वमा हुने चर् धातुदेखि "चरेष्टः"ले टप्रत्यय भयो, अनुबन्ध लोप भयो, समास आदिकार्य भयो, 'कुरुचर', सु आयो, 'कुरुचरः' सिद्ध भयो । स्त्रीत्व बुझिंदामा टित्वात् कुरुचर शब्ददेखि "टिड्ढाणञ्द्वयसच्०"ले ङीप् प्रत्यय भएर 'कुरुचरी' सिद्ध हुन्छ ।

**भिक्षेति**– भिक्षा शब्द, सेना शब्द, आदाय शब्दप्रकृतिक सुबन्त समर्थ उपपद भएमा चर् धातुदेखि ट प्रत्यय होस् ।

**भिक्षाचरः(भिक्षुक)**– भिक्षां चरति (भिक्षा गर्छ) भन्दा 'भिक्षा+ङस्' पूर्वमा हुने चर् धातुदेखि "भिक्षासेनादायेषु०"ले ट प्रत्यय भयो, समास, विभक्ति लुक् भयो, सु आयो, 'भिक्षाचर' सिद्ध भयो ।

**सेनाचरः(सैनिक)**– सेनायां चरति (सेनामा रहन्छ) यस अर्थमा 'सेना+ङि' पूर्वमा हुने चर् धातुदेखि उक्त सूत्रले ट प्रत्यय भयो समासादिकार्य भयो, 'सेनाचरः' सिद्ध भयो ।

**आदायेति**– आदाय यो ल्यप् प्रत्ययान्तशब्द हो ।

**आदायचरः(लिएर हिंड्ने व्यक्ति)**– आदाय चरति (लिएर हिंड्छ) यस अर्थमा आदाय शब्दपूर्वमा हुने चर् धातुदेखि "भिक्षासेना०"ले ट प्रत्यय भयो, समासादिकार्य भयो, 'आदायचरः' सिद्ध भयो ।

**कृञ इति**– कर्म [३१]बोधक सुबन्त उपपद भएमा हेतु, ताच्छील्य र आनुलोम्य अर्थ बुझिँदामा कृ धातुदेखि ट प्रत्यय होस् ।

**अतः कृकमीति**– अकारदेखि पर रहेका अव्यय भिन्न विसर्गका स्थानमा नित्य दन्त्य सकार

---

११७ कर्मबोधक सुबन्त उपपद भएमा यो काशिका वृत्तिको आधारमा लेखिएको छ ।

यशस्करी विद्या । श्राद्धकरः । वचनकरः ॥

**७९३. एजेः खश् ३।२।२८॥**

ण्यन्तादेजेः खश् स्यात् ॥

**७९४. अरुर्द्विषदजन्तस्य मुम् ६।३।६७॥**

अरुषो द्विषतोऽजन्तस्य च मुमागमः स्यात्खिदन्ते परे न त्वव्ययस्य । शित्त्वाच्छबादिः । जनमेजयतीति जनमेजयः ॥

**७९५. प्रियवशे वदः खच् ३।२।३८॥**

प्रियंवदः । वशंवदः ॥

---

होस्, कृ धातु, कम् धातु, कंस शब्द, कुम्भ शब्द, पात्र शब्द, कुशा शब्द, कर्णी शब्द पर भएमा ।

**यशस्करी (कीर्तिको हेतु विद्या बुद्धि आदि)**– यशः करोति तद्धेतुः यस विग्रहमा यशस्ङस् पूर्वमा हुने कृ धातुदेखि "कृञो हेतुः०"ले ट प्रत्यय भयो, समास, विभक्ति लुक् भयो, कृका ऋकारका स्थानमा गुण भयो, 'यशस्+कर' भयो, यशस्का सकारको रुत्व, विसर्ग भयो, 'यशस्कर' यहाँ स्त्रीत्व बुझिँदामा टित्त्वात् ङीप् प्रत्यय भयो, "कुप्वो-क-पौ च"लाई बाधेर "अतः कृकमि०"ले विसर्गका स्थान सकार भयो, 'यशस्करी' सिद्ध भयो । कीर्तिको हेतु विद्या बुद्धि आदि ।

**श्राद्धकरः(श्राद्ध गर्ने व्यक्ति)**– श्राद्धं करोति तच्छीलः (श्राद्ध गर्ने शील भएको) यस अर्थमा 'श्राद्ध+ङस्' पूर्वक कृ धातुदेखि प्रस्तुत सूत्रले ट प्रत्यय भयो, पूर्ववत् समासादिकार्य भयो, 'श्राद्धकरः' सिद्ध भयो ।

**वचनकरः(भनेको मान्ने व्यक्ति)**– वचनं करोति तदनुलोमा (भनेअनुसार काम गर्छ) यो अर्थमा 'वचन+ङस्' पूर्वक कृ धातुदेखि ट भयो, समासादि भयो, 'वचनकरः' सिद्ध भयो ।

**एजेरिति**– ण्यन्त एजि धातुदेखि खश् प्रत्यय होस्, कर्मबोधक सुबन्त उपपद भएमा । खकार शकारको इत्संज्ञा, लोप हुन्छ ।

**अरुरिति**– अरुष् शब्द, द्विषत् शब्द र अजन्त शब्दको नुम् आगम होस्, खिदन्त प्रत्यय पर भएमा, अव्ययको त मुम् आगम नहोस् । खश् प्रत्यय शित् हुनाले शप् आदि प्रत्यय हुन्छन् ।

**जनमेजयः(एक राजा)**– जनम् एजयति (लोकलाई कपाउँछन्), यस अर्थमा 'जन+ङस्' पूर्वक एजि धातुदेखि खश् प्रत्यय भयो, 'जन+ङस्+एजि+अ' भयो, अ, यो शित् हुनाले "कर्तरि शप्"ले शप् भयो, 'जन+ङस्+एजि+अ+अ' गुण, अय् आदेश, पररूप भयो, समासादिकार्य भयो, 'जन+एजय' भयो, "अरुर्द्विषदजन्तस्य०"ले मुम् आगम भयो, उम्, यो अनुबन्धको लोप भयो, मित्वात् म् यो जनका अकारदेखि अन्त्यतर्फ भयो, जनमेजय शब्द बन्यो, सु आयो, 'जनमेजयः' सिद्ध भयो ।

**प्रियवशेति**– कर्मबोधक प्रिय शब्द र वश शब्द प्रकृतिक सुबन्त समर्थ उपपद भएमा वद धातुदेखि खच् प्रत्यय होस् । खकार र चकारको इत्संज्ञा हुन्छ ।

**प्रियंवदः(प्यारो बोल्ने)**– प्रियं वदति (प्यारो बोल्छ) यस अर्थमा 'प्रिय+ङस्' पूर्वक वद धातुदेखि खच् भयो, समासादि कार्य भयो, खच् प्रत्यय खित् हुनाले अजन्त प्रिय शब्दको "अरुर्द्विषदजन्तस्य०"ले मुम् भयो, अनुस्वार भयो । 'प्रियंवद' शब्द निष्पन्न भयो, सु आयो, 'प्रियंवदः' सिद्ध भयो ।

**वशंवदः(अधीनव्यक्ति)**– वशं वदति (अधीनमा छु भन्दछ), यस अर्थमा 'वश+ङस्' पूर्वक वद् धातुदेखि प्रस्तुत सूत्रले खच् भयो, समासादिकार्य भयो, मुम् भयो, अनुस्वार भयो । सु आयो, 'वशंवदः' सिद्ध भयो ।

**७९६. अन्येभ्योऽपि दृश्यन्ते ३।२।७५॥**

मनिन् क्वनिप् वनिप् विच् एते प्रत्यया धातोः स्युः ॥

**७९७. नेड्वशि कृति ७।२।८॥**

वशादेः कृत इण् न स्यात् ॥ **शॄ** हिंसायाम् ॥ सुशर्मा । प्रातरित्वा ॥

**७९८. विड्वनोरनुनासिकस्यात् ६।४।४१॥**

अनुनासिकस्य आत् स्यात् । विजायत इति विजावा ॥ **ओणृ** अपनयने ॥ अवावा । विच् । **रुष रिष** हिंसायाम् ॥ रोट् । रेट् । सुगण् ॥

---

**अन्येभ्य इति**– मनिन्, क्वनिप्, वनिप्, विच् प्रत्यय धातुदेखि होऊन् । आकारान्त धातुदेखि मनिन्, क्वनिप्, वनिप्, विच्प्रत्यय "आतो मनिन्०" यो सूत्रले गर्छ र यसले अरू धातुदेखि पनि विधान गर्छ । मनिन् प्रत्ययमा इन्को क्वनिप् प्रत्ययमा क र इप्को वनिप् प्रत्ययमा इप्को इत्संज्ञा, लोप हुन्छ । मन्, वन्, वन् बाँकी रहन्छ । विच् प्रत्ययको सर्वापहारी लोप हुन्छ ।

**नेडिति**– वश् प्रत्यय आदिमा हुने कृत् प्रत्ययको इट् आगम नहोस् ।

**शॄ** धातु हिंसा अर्थमा छ ।

**सुशर्मा(महाभारतका प्रसिद्ध एक वीर)**– सुष्ठु शृणाति (राम्रो काट्छन्) । यस अर्थमा 'सु+शॄ' यसदेखि "अन्येभ्योऽपि दृश्यन्ते"ले मनिन् प्रत्यय भयो, इन् अनुबन्धको लोप भयो, 'सुशॄ+मन्' यहाँ मन् यो आर्धधातुक हुनाले इट् आगम पाएकोमा "नेड् वशि०"ले निषेध भयो, गुण भयो, सुशर्मन्, कृदन्तत्वात् प्रातिपदिकसंज्ञा भयो, सु आयो, 'सुशर्मा' सिद्ध भयो ।

**प्रातरित्वा (बिहान घुम्ने व्यक्ति)**– प्रातः एति (बिहान हिँड्छ, घुम्छ) यस अर्थमा प्रातर् शब्द पूर्वक इण् धातुदेखि क्वनिप् प्रत्यय भयो, अनुबन्ध लोप भयो, 'प्रातर्+इ+वन्' यहाँ इण् धातुको "ह्रस्वस्य पिति कृति०"ले तुक् आगम अन्त्यतर्फ भयो, 'प्रातरित्वन्'शब्द भयो, कृदन्तत्वात् प्रातिपदिकसंज्ञा भयो, सु आयो, 'प्रातरित्वा' सिद्ध भयो ।

**विड्वनोरिति**– विड् प्रत्यय र वन् प्रत्यय पर भएमा अनुनासिकका स्थानमा आकार होस् ।

**विजावा(धेरै पैदा हुने)**– विजायते (विशेषरूपले पैदा हुन्छ) भन्ने अर्थमा वि उपसर्ग पूर्वक जन् धातुदेखि उक्त सूत्रले वनिप् प्रत्यय भयो, 'विजन्+वन्' भयो, "विड्वनोरनुनासिकस्य०"ले नकारका स्थानमा आकार भयो, दीर्घ भयो, 'विजावन्' शब्द बन्यो । स्वादिकार्य भयो, 'विजावा' सिद्ध भयो ।

**अवावा (ब्राह्मणी)**– ओणति पापात् (पापबाट हटाउँछिन्) यस अर्थमा ओण्[११८] धातुदेखि वनिप् प्रत्यय भयो, 'ओण्+वन्' भयो "विड्वनोः०"ले णकारका स्थानमा आकार भयो, 'ओ+आ+वन्' भयो, अव् आदेश भयो, 'अवावन्'शब्द भयो, सु आयो, 'अवावा' सिद्ध भयो ।

विच् प्रत्ययको प्रदर्शन- रूष रिष् यी दुवै धातु हिंसा गर्नु अर्थमा छन् ।

**रोट्, रेट् (हिंसक)**– रोषति, रेषति, (रिसाउँछ) यस अर्थमा रुष्[११९] रिष् धातुदेखि "अन्येभ्योऽपि०"ले विच् प्रत्यय भयो, सर्वापहारी लोप भयो, "प्रत्ययलोपे०" लगाएर लघूपध गुण भयो, रोष् रेष् शब्द वने । रोष् रेष् शब्ददेखि सु आयो, लोप भयो, जश्त्व चर्त्व भयो, रोट्, रेट्, यी रूप सिद्ध भए ।

**सुगण(गन्न सिपालु)**– सुष्ठु गणयति (राम्रो सँग गिन्ती गर्छ)-यस अर्थमा सु उपसर्गपूर्वक ण्यन्त गणि धातुदेखि विच् प्रत्यय भयो, सर्वापहारी लोप भयो, "प्रत्ययलोपे०" लगाएर णिको

---

११८ ओणृअपनयने । भ्वादिः परस्मैपदी ।

११९ रुष, रिष, हिंसायाम् । भ्वादिः परस्मैपदी ।

**७९९. क्विप् च ३।२।७६॥**

अयमपि दृश्यते । उखास्रत् । पर्णध्वत् । वाहभ्रट् ॥

**८००. सुप्यजातौ णिनिस्ताच्छील्ये ३।२।७८॥**

अजात्यर्थे सुपि धातोर्णिनिस्ताच्छील्ये द्योत्ये । उष्णभोजी ॥

**८०१. मनः ३।२।८२॥**

सुपि मन्यतेर्णिनिः स्यात् । दर्शनीयमानी ॥

**८०२. आत्ममाने खश्च ३।२।८३॥**

स्वकर्मके मनने वर्त्तमानान्मन्यतेः सुपि खश् स्यात्, चाणिनिः ।

---

लोप भयो, सुगण शब्द बन्यो, सु आयो, लोप भयो, 'सुगण' सिद्ध भयो । =राम्रो गिन्ती गर्ने व्यक्ति ।

**क्विप् चेति**– यो क्विप् प्रत्यय पनि सबै धातुदेखि भएको देखिन्छ ।

क्विप् प्रत्ययको पनि विच् प्रत्ययको जस्तै सर्वापहारी लोप हुन्छ । क्विप् प्रत्यय कित् हुनाले गुण र वृद्धिको निषेध हुन्छ । पित् हुनाले ह्रस्वान्त धातुको तुक् आगम हुन्छ । धातुका उपधामा नकार भए "अनिदितां०" ले लोप हुन्छ ।

**उखास्रत्/द् (कसौंडीबाट गिर्ने भातको सिता)** – उखाया स्रंसते (कसौंडीबाट गिर्छ) यस अर्थमा 'उखा+ङसि' पूर्वमा हुने स्रंस् धातुदेखि क्विप् प्रत्यय भयो, सर्वापहारी लोप भयो, समास, विभक्तिलुक् भयो, "अनिदितां"ले अनुस्वार भए पनि नकार नै देखेकोले नकारको लोप भयो, '**उखास्रस्**'शब्द भयो, सु आयो "हल्ङ्याप्०"ले लोप भयो, "वसुस्रंसुध्वंस्वनडुहां दः"ले दत्व भयो, चर्त्व भयो, 'उखास्रत्/द' सिद्ध भयो । औ,जस्, मा उखास्रसौ, उखास्रसः हुन्छ ।

**पर्णध्वत(पातबाट खस्ने पानीको बँद)** –पर्णात् ध्वंसते (पातबाट खस्छ) यस अर्थमा 'पर्ण+ङसि' पूर्वमा हुने ध्वंस धातुदेखि क्विप् प्रत्यय भयो, सर्वापहारी लोप भयो, समास, विभक्तिको लुक्, नकारको लोप भएर 'पर्णध्वस्' शब्द बन्यो । सु आयो, पूर्ववत् कार्य भयो , 'पर्णध्वत्/द्' सिद्ध भयो ।

**वाहभ्रट्(घोडाबाट खस्ने)**– वाहात् भ्रंशते (घोडाबाट खस्छ) यस अर्थमा 'वाह+ङसि' पूर्वमा हुने भ्रंश् धातुदेखि क्विप् प्रत्यय भएर पूर्ववत् 'वाहभ्रश्'शब्द बन्यो, सु आयो, "हल्ङ्याब्भ्यो०"ले लोप भयो, "व्रश्चभ्रस्ज०" ले षत्व भयो, जश्त्व, चर्त्व भयो, 'बाहभ्रट्/ड्' सिद्ध भयो ।

**सुप्यजाताविति**– जात्यर्थभिन्न सुबन्त उपपद भएमा धातुदेखि णिनि प्रत्यय होस्, ताच्छील्य अर्थ द्योत्य भएमा । णकार र अन्तिम इकारको इत्संज्ञा, लोप हुन्छ ।

**उष्णभोजी(तातो खाने)**– उष्णं भुङ्क्ते तच्छीलः (तातो खाने बानी भएको) यस अर्थमा 'उष्ण+ङस्' पूर्वमा हुने भुज धातुदेखि णिनि प्रत्यय भयो, णकार र अन्त्य इकारको लोप भयो, 'भुज्+इन्' भयो । भुजका उकारको लघूपधगुण भयो, समासादिकार्य भयो, 'उष्णभोजिन्' शब्द बन्यो, सु आयो, विभक्तिकार्य भयो, 'उष्णभोजी' सिद्ध भयो ।

**मन इति**– सुबन्त उपपद भएमा मन् धातुदेखि णिनि प्रत्यय होस् ।

**दर्शनीयमानी (देख्न योग्य संभ्रुने )**– दर्शनीयं मन्यते (देख्न योग्य मान्दछ) यस अर्थमा 'दर्शनीय+ङस्' पूर्वमा हुने मन् धातुदेखि णिनि प्रत्यय भयो, पूर्ववत् कार्य भयो, 'दर्शनीयमानिन्' शब्द भयो, सु आयो, लोप भयो, उपधादीर्घ, नकारको लोप भयो, 'दर्शनीयमानी' सिद्ध भयो ।

**आत्ममान इति**– स्वकर्मक मनन क्रियामा वर्तमान मन् धातुदेखि सुबन्त उपपद भएमा खश् प्रत्यय होस् चकार पढ्नाले णिनि प्रत्यय पनि होस् ।

---

पण्डितमात्मानं मन्यते पण्डितंमन्यः । पण्डितमानी ॥

**८०३. खित्यनव्ययस्य ६।३।६६॥**

खिदन्ते परे पूर्वपदस्य ह्रस्वः । ततो मुम् । कालिम्मन्या ॥

**८०४. करणे यजः ३।२।८५॥**

करणे उपपदे भूतार्थे यजेर्णिनिः कर्तरि । सोमेनेष्टवान् सोमयाजी । अग्निष्टोमयाजी ॥

**८०५. दृशेः क्वनिप् ३।२।९४॥**

कर्मणि भूते । पारं दृष्टवान् पारदृश्वा ॥

---

**पण्डितम्मन्यः, पण्डितमानी (आफूलाई पण्डित सम्झने)**– पण्डितम् आत्मानं मन्यते यस अर्थमा 'पण्डित+ङस्' उपपद मन् धातुदेखि "आत्ममाने०"ले खश् प्रत्यय भयो, खकार शकारको इत्संज्ञा, लोप भयो, श्यन् प्रत्यय भयो, अर्को पक्षमा णिनि प्रत्यय पनि भयो, णिनिको णकार नकारको लोप भयो, इन्मा णित्त्व हुनाले "अत उपधायाः"ले वृद्धि भयो, 'पण्डित+ङस्+मन्य', 'पण्डित+ङस्+मानिन्' भयो, दुवै पक्षमा समास र विभक्ति लुक् भएपछि खश् प्रत्यय भएको पक्षमा मुम् भयो 'पण्डितम्मन्य', णिनि प्रत्यय भएको पक्षमा 'पण्डितमानिन्' भयो, दुई शब्द वने । यी दुवै शब्ददेखि सु आयो 'पण्डितम्मन्यः', 'पण्डितमानी' सिद्ध भयो ।

**खितीति**– खिदन्त पर भएमा पूर्वपदको ह्रस्व होस् तर अव्ययको नहोस् । त्यसपछि मुम् हुन्छ ।

**कालिम्मन्या(आफूलाई काली सम्झने स्त्री)** – कालीम् आत्मानं मन्यते(आफूलाई कालिका सम्झन्छे) यस अर्थमा 'काली+ङस्' उपपद हुने मन् धातुदेखि "आत्ममाने०"ले खश् प्रत्यय भयो, श्यन् प्रत्यय भयो, समास, विभिक्त लुक् भएपछि "खित्यनव्ययस्य"ले "अलोऽन्त्यस्य" लाएर कालीका ईकारको हृस्व भयो, मुम् आगम भयो, स्त्रीत्वात् टाप् प्रत्यय भयो, सु आयो, लोप भयो, 'कालिम्मन्या' सिद्ध भयो ।

**करण इति**– करणबोधक सुबन्त समर्थ उपपद भएमा भूतकालिक अर्थमा वर्तमान यज् धातुदेखि णिनि प्रत्यय होस् कर्ता अर्थमा ।

**सोमयाजी**– सोमेन इष्टवान् (सोमलताले यज्ञ गऱ्यो) यस अर्थमा 'सोम+टा+यज्' देखि "करणे यजः"ले णिनि प्रत्यय भयो, "अत उपधायाः"ले वृद्धि भयो, समास, विभिक्त लुक् भयो, 'सोमयाजिन्'शब्द बन्यो । त्यसदेखि सु आयो, 'सोमयाजी' सिद्ध भयो ।

**अग्निष्टोमयाजी**– अग्निष्टोमेन इष्टवान् (अग्निष्टोम यज्ञ गऱ्यो), यस अर्थमा 'अग्निष्टोम+टा+यज्' देखि "करणे यजः"ले णिनि प्रत्यय, उपधावृद्धि, समास, विभक्तिलुक् भयो, 'अग्निष्टोमयाजिन्' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अग्निष्टोमयाजी' सिद्ध भयो ।

**दृशेरिति**– कर्मबोधक सुबन्त समर्थ उपपद भएमा भूतकालिक अर्थमा वर्तमान दृश् धातुदेखि क्वनिप् प्रत्यय होस् ।

**पारदृश्वा(पार पुगेको)**– पारं दृष्टवान् (पार देख्यो) यस अर्थमा 'पार+ङस्+दृश्' देखि "दृशेः क्वनिप्"ले क्वनिप् प्रत्यय भयो, ककार र इप्को इत्संज्ञा लोप भयो, 'पार+ङस्+दृश्+वन्' भयो, समास, विभक्तिलुक् भयो, क्वनिप् प्रत्ययमा कित्व हुनाले दृश्का ऋकारका स्थानमा लघूपध गुण भएन 'पारदृश्वन्' शब्द बन्यो, त्यसदेखि सु आयो, लोप भयो, उपधाको दीर्घ नकारको लोप भयो, 'पारदृश्वा' सिद्ध भयो ।

---

**८०६. राजनि युधि कृञः ३।२।९५**

क्वनिप्स्यात् । युधिरन्तर्भावितण्यर्थः ।राजानं योधितवान् राजयुध्वा ।राजकृत्वा ॥

**८०७. सहे च ३।२।९६॥**

कर्मणीति निवृत्तम् । सह योधितवान् सहयुध्वा । सहकृत्वा ॥

**८०८. सप्तम्यां जनेर्डः ३।२।९७॥**

**८०९. तत्पुरुषे कृति बहुलम् ६।३।१४॥**

ङेरलुक् । सरसिजम्, सरोजम् ॥

**८१०. उपसर्गे च संज्ञायाम् ३।२।९९॥**

प्रजा स्यात्संततौ जने ॥

---

**राजनीति**– कर्मबोधक राजन्शब्दप्रकृतिक सुबन्त समर्थ उपपद भएमा युध् धातु र कृञ् धातुदेखि क्वनिप् प्रत्यय होस् ।

**राजयुध्वा(राजाहरूलाई लडाउने व्यक्ति)**– राजानं योधितवान् (राजालाई लड्न लगायो) भन्दा 'राजन्+ङस्' उपपद हुने युध् धातुदेखि "राजनि युधि कृञः"ले क्वनिप् प्रत्यय भयो अनुबन्धलोप भयो कित्त्वात् उपधागुण भएन, समास आदि भएपछि 'राजयुध्वन्' शब्द भयो, त्यसदेखि सु आयो, विभक्तिकार्य भयो, 'राजयुध्वा' सिद्ध भयो ।

**युधिरिति**– यहाँ णिच्को अर्थ अन्तर्भाव भएको युध् धातु छ ।

**राजकृत्वा(राजा बनाउने मान्छे)**– राजानं कृतवान् (राजालाई बनायो) भन्दा 'राजन्+ङस्' उपपद हुने कृ धातुदेखि उक्त सूत्रले क्वनिप् प्रत्यय भयो, 'राजन्+ङस्+कृ+वन्' भयो, वन् कित् हुनाले कृको (ह्रस्वस्व पिति०"ले तुक्आगम भयो, समास आदि भयो, 'राजकृत्वन्' शब्द बन्यो, त्यसदेखि सु आयो, 'राजकृत्वा' सिद्ध भयो ।

**सहे चेति**– 'कर्मणि' यो अनुवृत्ति निवृत्त भयो । सह शब्द उपपद भएमा युध् धातु र कृञ् धातुदेखि क्वनिप् प्रत्यय होस् ।

**सहयुध्वा**– सह योधितवान् (सँगै लड्न प्रेरणा गऱ्यो) यस अर्थमा सह शब्दपूर्वक युध् धातु देखि "सहे च"ले क्वनिप् प्रत्यय भयो, 'सहयुध्वन्' शब्द बन्यो, त्यसदेखि सु आयो, 'सहयुध्वा' सिद्ध भयो ।

**सहकृत्वा**– सह कृतवान् (सँगै काम गऱ्यो) यस अर्थमा सह शब्दपूर्वक कृ धातु "सहे च"ले क्वनिप् भयो, कृ धातुको तुक् आगम भयो, सहकृत्वन् शब्द बन्यो, त्यसदेखि सु आयो, 'सहकृत्वा' सिद्ध भयो ।

**सप्तम्यामिति**– सप्तम्यन्त समर्थ उपपद हुने जन् धातुदेखि ड प्रत्यय होस् ।

**तत्पुरुषेति**– तत्पुरुष समासमा कृदन्त उत्तरपद पर भएमा ङिको विकल्पले अलुक् होस् ।

**सरसिजम्/सरोजम् (कमल)**– सरसि जातम् (तलाऊमा जन्मेको) भन्दा 'सरस्+ङि' पूर्वमा हुने जन् धातुदेखि "सप्तम्यां जनेः०"ले ड प्रत्यय भयो, डित्त्वसामर्थ्यात्, टिलोप भयो, 'सरस्+ङि+ज' भयो, समास भयो, "सुपो धातुप्रा०"ले ङिको लुक् पाएकोमा "तत्पुरुषे कृति०"ले वैकल्पिक अलुक् भयो, अनुबन्धलोप भयो, 'सरसिज' शब्द बन्यो, त्यसदेखि सु आयो, 'सरसिजम्' सिद्ध भयो । अलुक् नभएको पक्षमा लुक् भयो, 'सरस्+ज', यहाँ रुत्व, उत्व, गुण भयो, 'सरोज' शब्द बन्यो, त्यसदेखि सु आयो, 'सरोजम्' सिद्ध भयो ।

**उपेति**– उपसर्ग पूर्वमा हुने जन धातुदेखि ड प्रत्यय होस्, संज्ञा बुझिँदामा ।

**प्रजा**– प्रकर्षेण जायन्ते (अधिकमात्रामा जन्मन्छन्) यस अर्थमा प्र उपसर्ग पूर्वक जन् धातुदेखि

**८११. क्तक्तवतू निष्ठा १।१।२६॥**

एतौ निष्ठासंज्ञौ स्तः ॥

**८१२. निष्ठा ३।२।१०२॥**

भूतार्थवृत्तेर्धातोर्निष्ठा स्यात् । तत्र तयोरेवेति भावकर्मणोः क्तः । कर्तरि कृदिति कर्तरि क्तवतुः । उकावितौ । स्नातं मया । स्तुतस्त्वया विष्णुः । विश्वं कृतवान् विष्णुः ॥

---

"उपसर्गे च०"ले ड प्रत्यय भयो, टिलोप भयो, स्त्रीत्वात् टाप् प्रत्यय भयो, सु आयो, 'प्रजा' सिद्ध भयो । "प्रजा स्यात्सन्ततौ जने" (प्रजा शब्द सन्तान र दुनियाँको बाचक हो ।) (अमरकोश )

**क्तक्तवतू इति**– क्त र क्तवतु प्रत्यय निष्ठासंज्ञक होऊन् ।

**निष्ठेति**– भूतकालिक अर्थमा वर्तमान धातुदेखि निष्ठासंज्ञक प्रत्यय होऊन् । ती मध्ये "तयोरेव कृत्यक्तखलर्थाः" लगाएर क्त प्रत्यय धातुदेखि भावमा र कर्ममा हुन्छ । अर्थात् अकर्मक धातुदेखि भावमा र सकर्मक धातुदेखि कर्ममा हुन्छ । "कर्तरि कृत्" यो सूत्र लगाएर कर्तामा क्तवतु प्रत्यय हुन्छ । क्त र क्तवतु प्रत्ययमा रहेका उ र क इत्संज्ञा भएर लोप हुन्छन् । स्नातं त्वया (तिमीले नुहायौ ।) स्तुतस्त्वया विष्णुः (तिमीद्वारा विष्णु स्तुति गरिए ।) यी दुई वाक्य मध्ये पहिलो वाक्यमा 'स्नातं' यहाँ क्त प्रत्यय भावमा र 'स्तुतः' यहाँ क्त प्रत्यय कर्ममा भएको छ ।

**स्नातम्**– क्त र क्तवतुलाई "क्तक्तवतू०"ले निष्ठा संज्ञा भयो, "निष्ठा"ले भूतकालिक अर्थमा वर्तमान स्ना धातुदेखि अस्नायि यो विग्रहमा भाव अर्थमा क्त प्रत्यय भयो, ककारको इत्संज्ञा, लोप भयो, स्नाधातु अनिट् हुनाले तको इट् भएन स्नात शब्द बन्यो, त्यसदेखि सु आयो, 'स्नातम्' सिद्ध भयो । भावमा प्रत्यय भएकोले एकवचन र नपुंसक लिङ्ग मात्र हुन्छ । कर्ता तृतीयान्त हुन्छ भन्ने बुझाउन यहाँ 'मया' यो देखाएको छ । यहाँ स्ना धातु अकर्मक हुनाले भावमा क्त प्रत्यय भएको छ । कर्तामा क्तवतु प्रत्यय भएको रूप तल देखाइन्छ ।

**स्नातवान्**– अस्नासीत् यो विग्रहमा स्ना धातुदेखि 'निष्ठा'ले कर्ता अर्थमा 'क्तवतु' भयो, उकार र ककारको इत्संज्ञा र लोप भयो, तवत्को इट् आगम निषेध भयो, 'स्नातवत्' शब्द बन्यो, त्यसदेखि सु आयो, 'स्नातवान्' सिद्ध भयो ।

'स्तुतस्त्वया विष्णुः' यो वाक्यमा कर्ममा प्रत्यय भएको स्तुधातुको रूप देखाएको छ । स्तु धातु सकर्मक छ । अतः कर्ममा क्त प्रत्यय कर्तामा क्तवतु प्रत्यय हुन्छ ।

**स्तुतः**– अस्तावि यो विग्रहमा स्तु धातुदेखि "निष्ठा"ले कर्ममा क्त प्रत्यय भयो, स्तु धातु अनिट् हुनाले इट् भएन, क्तमा कित्व हुनाले गुण भएन, 'स्तुत' शब्द बन्यो, त्यसदेखि सु आयो, 'स्तुतः' सिद्ध भयो । यसको कर्म विष्णु पुलिङ्ग हुनाले 'स्तुतः' यहाँ पुलिङ्ग भयो, यदि कर्म 'देवी' राख्ने हो भने 'स्तुता त्वया देवी' यस्तो हुन्छ । अर्थात् कर्ममा प्रत्यय गरेर भएको निष्पन्न धातुरूपको कर्मसँग नै सामानाधिकरण्य हुन्छ ।

विश्वं कृतवान् विष्णुः (विष्णुले जगत् बनाए ।) कृ धातु सकर्मक छ । अतः कर्ममा क्त र कर्तामा क्तवतु प्रत्यय हुन्छ । 'कृतवान्' यो कर्तामा क्तवतु प्रत्यय भएको रूप हो ।

**कृतवान्**– अकार्षीत् यो विग्रहमा कृधातुदेखि कर्तामा "निष्ठा"ले क्तवतु प्रत्यय भयो, इट् आगमको निषेध भयो, 'कृ+तवत्' यहाँ तवत् कित् हुनाले गुण भएन, 'कृतवत्' शब्द बन्यो, त्यसदेखि सु आयो, 'कृतवान्' सिद्ध भयो । यसको कर्ता विष्णु हो, कर्ता उक्त भएको हुनाले तृतीयान्त भएन, प्रथमान्त भयो र 'विष्णुः' भयो । कर्म अनुक्त हुनाले अनुक्त कर्ममा द्वितीया भयो, 'विश्वम्', यही बुझाउन 'विश्वं कृतवान् विष्णुः' यो वाक्य दिएको छ ।

**८१३. रदाभ्यां निष्ठातो नः पूर्वस्य च दः ८।२।४२॥**

रदाभ्यां परस्य निष्ठातस्य नः स्यात्, निष्ठापेक्षया पूर्वस्य धातोर्दस्य च ॥ **शॄ** हिंसायाम् । "ॠत इत्" ।रपरः । णत्वम् । शीर्णः । भिन्नः । छिन्नः ॥

**८१४. संयोगादेरातो धातोर्यण्वतः ८।२।४३॥**

निष्ठातस्य नः स्यात् । द्राणः । ग्लानः ॥

**८१५. ल्वादिभ्यः ८।२।४४॥**

एकविंशतेर्लूञादिभ्यः प्राग्वत् । लूनः ॥ **ज्या** धातुः ॥ ग्रहिज्येति संप्रसारणम् ॥

---

**रदाभ्यामिति**– रेफ र दकारदेखि पर रहेका निष्ठासञ्ज्ञक प्रत्ययका तकारका स्थानमा नकार होस् र निष्ठाको अपेक्षाले पूर्वका दकारका स्थानमा पनि नकार होस् ।

शॄ धातु हिंसा गर्नु अर्थमा छ । यो धातु परस्मैपदी, अनिट्, सकर्मक हो ।

**ॠत इदिति**– "ॠत इत्"ले रेफ पर भएको इकार इर् हुन्छ, नत्व र णत्व हुन्छ ।

**शीर्णः**– अशारि यो विग्रह शॄ धातुदेखि कर्ममा क्तप्रत्यय भयो, "ॠत इद्धातोः"ले इर् भयो, उपधादीर्घ भयो, "रदाभ्यां०"ले तकारका स्थानमा नकार भयो, णत्व भयो, 'शीर्ण' शब्द बन्यो, त्यसदेखि सु आयो, 'शीर्णः' सिद्ध भयो ।

**भिन्नः(फरक), छिन्नः(टुक्रिएको)**– अभेदि यो विग्रहमा भिद् धातुदेखि र अच्छेदि यस् विग्रहमा छिद् धातुदेखि कर्ममा "निष्ठा"ले त प्रत्यय भयो," रदाभ्यां०"ले तकारका स्थानमा नकार भयो, धातुका दकारका स्थानमा नकार पनि भयो, 'भिन्न', 'छिन्न' यी शब्द बने, कृदन्तत्वात् प्रातिपदिकसंज्ञा भयो, ती दुवै शब्ददेखि सु आयो, 'भिन्नः', 'छिन्नः', यी रूप सिद्ध भए ।

यस प्रकरणमा कहीं क्त प्रत्ययको कहीं क्तवतु प्रत्ययको मात्र रूप देखाइए पनि क्त, क्तवतु दुवै प्रत्यय हुन्छन् भन्ने सम्झिरहनु पर्छ । जस्तै उक्त शॄ, छिद्, भिद् धातुको कर्तामा क्तवतु प्रत्यय भएर क्रमशः शीर्णवान्, छिन्नव न्, भिन्नवान् यी रूप पनि हुन्छन् ।

**संयोगादेरिति**– संयोग आदिमा हुने यण्वान् आकारान्त धातुदेखि पर रहेका निष्ठासञ्ज्ञक प्रत्ययसम्बन्धी तकारका स्थानमा नकार होस् ।

**द्राणः**– अद्रायि यो विग्रहमा द्रा धातुदेखि क्त प्रत्यय भयो, "संयोगादेः०"ले तकारको स्थानमा नकार भयो, णत्व भयो, 'द्राण' शब्द बन्यो, त्यसदेखि सु आयो, 'द्राणः' सिद्ध भयो ।

**ग्लानः**– ग्लै धातुका ऐकारका स्थानमा शित् भिन्न प्रत्ययको विवक्षामा "आदेचः०"ले आकार भयो, ग्ला भयो, ग्ला धातुदेखि क्त प्रत्यय भयो, "संयोगादेरातो०"ले तकारका स्थानमा नकार भयो, 'ग्लान' शब्द बन्यो, त्यसदेखि सु आयो, 'ग्लानः', सिद्ध भयो । आदिकर्ममा गरिने क्त प्रत्यय भाव, कर्म र कर्तामा वर्तमानकालमा पनि हुन्छ । त्यस्तै गत्यर्थक धातु, अकर्मक धातु, श्लिष्, शीङ्, स्था, आस्, वस्, जन् रुह जॄ धातुदेखि पनि भाव, कर्म एवं कर्तामा क्त प्रत्यय हुन्छ । यस्तै अरू नियम पनि क्त प्रत्यय सम्बन्धमा छन् । अतः विग्रह नराखीकन नै प्रत्यय गरिएको छ र प्रकरण अनुसार निष्पन्न शब्दको काल र वाच्य मिलाएर विग्रह गर्नुपर्छ । जस्तै 'ग्लानः' यो रूप कर्तामा भूतकालमा भएको छ ।

**ल्वादिभ्य इति**– लूञ् आदि एकाईस धातुदेखि पर रहेका निष्ठासञ्ज्ञक प्रत्ययका तकारका स्थानमा नकार होस् ।

**ज्या** धातु बुढो हुनु अर्थमा छ ज्या धातुदेखि क्त प्रत्यय कित् हुनाले त्यो पर भएमा "ग्रहिज्या०" ले सम्प्रसारण हुन्छ ।

**८१६. हलः ६।४।२॥**

अङ्गावयवाद्धलः परं यत्संप्रसारणं तदन्तस्य दीर्घः । जीनः ॥

**८१७. ओदितश्च ८।२।४५॥**

**भुजो**, भुग्नः । **टुओश्वि**, उच्छूनः ॥

**८१८. शुषः कः ८।२।५१॥**

निष्ठातस्य कः । शुष्कः ॥

**८१९. पचो वः ८।२।५२॥**

पक्वः । **क्षै** क्षये ॥

**८२०. क्षायो मः ८।२।५३॥**

क्षामः ॥

---

**हल इति**– अङ्गको अवयव हल्देखि पर रहेको जो सम्प्रसारण छ तदन्त अङ्गका स्थानमा दीर्घ होस् ।

**जीनः**– ज्या धातुदेखि क्त प्रत्यय भयो, "ल्वादिभ्यः"ले तकारका स्थानमा नकार भयो, "ग्रहिज्या०"ले संप्रसारण, पूर्वरूप भयो, 'जि+न' यहाँ "हलः"ले "अलोऽन्त्यस्य" लाएर इकारका स्थानमा दीर्घ ईकार भयो, 'जीन' शब्द बन्यो, त्यसदेखि सु आयो, 'जीनः' सिद्ध भयो ।

**ओदिति**– ओकारको इत्संज्ञा हुने धातुदेखि पर रहेका निष्ठासंज्ञक प्रत्ययका तकारका स्थानमा नकार होस् ।

**भुजो** धातु बाङ्गो हुनु अर्थमा छ । ओकारको इत्संज्ञा, लोप हुन्छ । यो धातु रुधादिको परस्मैपदी, अनिट्, अकर्मक हो ।

**भुग्नः(भाँचिएको)**– भुज् धातुदेखि क्त प्रत्यय भयो, 'ओदितश्च'ले तकारको स्थानमा नकार भयो, "चोः कुः"ले कुत्व भयो, 'भुग्न'शब्द बन्यो, त्यसदेखि सु आयो, 'भुग्नः' सिद्ध भयो ।

**टुओश्वि** धातु हिंड्नु र बढ्नु अर्थमा छ । टु, ओ, दुवैको इत्संज्ञा, लोप हुन्छ । श्वि बाँकी रहन्छ ।

**उच्छूनः(सुन्निएको, फुलेको)**– उद् उपसर्ग पूर्वमा हुने श्वि धातुदेखि क्त प्रत्यय भयो, "श्वीदितो निष्ठायाम्"ले इट् आगमको निषेध भयो, "वचिस्वपियजादीनां०"ले संप्रसारण भयो, "हलः"ले दीर्घ भयो, 'उद्+शू+त' भयो, "ओदितश्च"ले तकारको नकार भयो, उद्का दकारको श्चुत्व भएर जकार भयो, "खरिच"ले चर्त्व भयो, 'उच्छून' शब्द बन्यो, त्यसदेखि सु आयो, 'उच्छूनः' सिद्ध भयो ।

**शुष इति**– शुष् धातुदेखि पर रहेका निष्ठासंज्ञक प्रत्ययको अवयव तकारका स्थानमा ककार होस् ।

**शुष्कः(सुकेको)**– शुष् धातुदेखि क्त प्रत्यय भयो, 'शुष्+त' भयो, "शुषः कः"ले तकारका स्थानमा ककार आदेश भयो 'शुष्क' शब्द बन्यो, त्यसदेखि सु आयो, 'शुष्कः' सिद्ध भयो ।

**पच इति**– पच् धातुदेखि पर रहेका निष्ठासंज्ञक प्रत्ययको अवयव तकारका स्थानमा वकार आदेश होस् ।

**पक्वः(पाकेको)**– पच् धातुदेखि क्त प्रत्यय भयो, 'पच्+त' "चोः कुः"ले कुत्व भयो, "पचो वः"ले तकारका स्थानमा वकार भयो, 'पक्व' शब्द बन्यो, सु आयो, 'पक्वः' सिद्ध भयो ।

**क्षाय इति**– क्षै धातुदेखि पर रहेका निष्ठासम्बन्धी तकारका स्थानमा मकार आदेश होस् ।

**क्षामः(दुर्बल)**– अशित् प्रत्यय क्तको विवक्षामा "आदेश उपदेशे०"ले क्षैका ऐकारको स्थानमा आकार भयो, क्षा भयो, क्षा धातुदेखि क्त प्रत्यय भयो, 'क्षा+त' भयो, तकारका स्थानमा "क्षायो मः"ले मकार भयो, 'क्षाम' शब्द बन्यो, त्यसदेखि सु आयो, 'क्षामः' सिद्ध भयो ।

---

**८२१. निष्ठायां सेटि ६।४।५२॥**

णेर्लोपः । भावितः । भावितवान् । **दृह** हिंसायाम् ॥

**८२२. दृढः स्थूलबलयोः ७।२।२०॥**

स्थूले बलवति च निपात्यते ॥

**८२३. दधातेर्हिः ७।४।४२॥**

तादौ किति । हितम् ॥

**८२४. दो दद् घोः ७।४।४६॥**

घुसंज्ञकस्य दा इत्यस्य दथ् स्यात् तादौ किति । चर्त्वम् । दत्तः ॥

**८२५. लिटः कानज्वा ३।२।१०६॥**

**८२६. क्वसुश्च ३।२।१०७॥**

लिटः कानच् क्वसुश्च वा स्तः । "तङानावात्मनेपदम्" । चक्राणः ॥

---

**निष्ठायामिति**– इट् आगम भएको निष्ठासंज्ञक प्रत्यय पर रहेमा णिको लोप होस् ।

**भावितः, भावितवान्**– ण्यन्त भावि धातुदेखि क्त र क्तवतु प्रत्यय भयो, इट् आगम भयो, 'भावि+इत', 'भावि+इतवत्' "निष्ठायां सेटि"ले णिको लोप भयो, 'भावित', 'भावितवत्' यी शब्द बने । ती दुवैदेखि सु आयो, 'भावितः', 'भावितवान्' यी दुई रूप सिद्ध भए ।

**दृढ इति**– मोटो र बलवान् अर्थ बुझिँदामा दृंह् धातुदेखि क्त प्रत्ययान्त दृढ शब्द निपातन गरिन्छ ।

**दृढः(बलियो)**– दृंह् धातुदेखि क्त प्रत्यय भयो, 'दृंह्+त' भयो । इट् आगम पाएकोमा "दृढः स्थूलबलयोः" यो सूत्रले निपातनात् निषेध भयो, तकारका स्थानमा ढकार भयो, उपधाका नकार र हकारको लोप भयो, 'दृढ' शब्द बन्यो, सु आयो, 'दृढः' सिद्ध भयो ।

**दधातेरिति**– धा धातुका स्थानमा हि आदेश होस् तकार आदिमा हुने कित् प्रत्यय पर भएमा ।

**हितम्**– धा धातुदेखि क्त प्रत्यय भयो, 'धा+त' भयो, "दधातेर्हिः"ले धाका स्थानमा हि आदेश भयो, 'हित' शब्द बन्यो, त्यसदेखि सु आयो, नपुंसकत्वात् अम् भयो, 'हितम्' सिद्ध भयो ।

**दोददिति**– घुसंज्ञक दा यसका स्थानमा दथ् आदेश होस् तकार आदिमा हुने कित् प्रत्यय पर भएमा ।

सूत्र "दो दद् घोः" यस्तो छ । दद् यो रूप, प्रथमाको एकवचनमा दत्, दथ्, दद्, दध्, चारवटै शब्दबाट निष्पन्न हुन्छ । यो कुन शब्दको रूप हो त ? भन्दा यहाँ थकारान्त दथ् शब्दको सुको रूप मानिएको छ । यहाँ

"तान्ते दोषो दीर्घत्वं स्याद्दान्ते दोषो निष्ठानत्वम् ।
धान्ते दोषो धत्वप्राप्तिस्थान्तेऽदोषस्तस्मात् थान्तम् ॥"

तकारान्त आदेश गर्दा "दस्ति"ले उपसर्गको विदत्तम् आदि ठाउँमा दीर्घ पाउँछ । दान्त आदेश गर्दा "रदाभ्यां०"ले नत्व पाउँछ । धान्त आदेश गर्दा "झषस्तथोः०"ले धत्व पाउँछ । अतः थान्त आदेश गर्नुपर्छ, भनिएको छ । तर यहाँ तकारादि उत्तरपद पर भएमा भनेकोले "दस्ति"ले दीर्घ हुन्न· । सन्निपातपरिभाषाले दान्त धान्त आदेश गरे पनि नत्व, धत्व हुन्न । अतः दकारान्त आदेश गर्दा केही फरक पर्दैन ।

**लिट इति, क्वसुश्चेति**– "लिटः कानज्वा" र "क्वसुश्च" यी दुवै सूत्रको संयुक्त अर्थ गरिन्छ ।

लिट् लकारका स्थानमा कानच् प्रत्यय र क्वसु प्रत्यय विकल्पले होऊन् ।

**तङानाविति**– "तङानावात्मनेपदम्"ले कानच्लाई आत्मनेपदसंज्ञा हुने हुनाले आत्मनेपदी या उभयपदी धातुदेखि नै यो प्रत्यय हुन्छ । क्वसु प्रत्यय परस्मैपद हुनाले परस्मैपदी धातुदेखि क्वसु हुन्छ ।

**चक्राणः**– कृ धातुदेखि लिट् लकार भयो, क्रियाको फल कर्तामा गएमा त्यसका स्थानमा

८२७. **म्वोश्च ८।२।६५॥**

मान्तस्य धातोर्नत्वं म्वोः परतः । जगन्वान् ॥

८२८. **लटः शतृशानचावप्रथमासमानाधिकरणे ३।२।१२४॥**

अप्रथमान्तेन समानाधिकरणे लट एतौ वा स्तः । शबादि । पचन्तं चैत्रं पश्य ॥

८२९. **आने मुक् ७।२।८२॥**

अदन्ताङ्गस्य मुगागमः स्यादाने परे । पचमानं चैत्रं पश्य ।

---

"लिटः कानज्वा"ले आत्मनेपद कानच् प्रत्यय भयो, अनुबन्ध लोप भयो, 'कृ+आन' भयो, द्वित्व, अभ्यासकार्य भयो, 'चकृ+आन', यण् भयो, 'चक्रान', णत्व, 'चक्राण' शब्द बन्यो, त्यसदेखि सु आयो, 'चक्राणः' सिद्ध भयो ।

**म्वोरिति–** मकारान्त धातुका मकारका स्थानमा नकार होस्, मकार वकार पर भएमा ।

**जगन्वान्–** गम् धातुदेखि लिट् भयो, गम् धातु परस्मैपदी हुनाले लिट्का स्थानमा क्वसु भयो, "एकाच उपदेशे०"ले इट् आगमको निषेध भयो, द्वित्व, अभ्यासकार्य भयो, 'जगम्+वस्' भयो, "म्वोश्च"ले मकारका स्थानमा नकार भयो, 'जगन्वस्' शब्द बन्यो, त्यसदेखि सु आयो, विभक्तिकार्य भयो, 'जगन्वान्' सिद्ध भयो । यहाँ क्वसुमा उकारको इत्संज्ञा हुने हुनाले "उगिदचां०"ले नुम् हुन्छ "सान्तमहतः०"ले दीर्घ हुन्छ । औट्सम्म यसैगरी रूप हुन्छन् । जगन्वान्, जगन्वांसौ, जगन्वांसः । जगन्वांसम्, जगन्वांसौ ।

**शस्मा–** 'जगन्वस्+अस्' यहाँ "वसोः सम्प्रसारणम्"ले संप्रसारण भएर 'जगन्+उस्+अस्' यहाँ "निमित्तापाये०"ले नकारको मकार नै हुन्छ । "गमहन०"ले उपधालोप हुन्छ, 'जग्म्+उस् +अस्', 'जग्मुस्+अस्', षत्व, 'जग्मुषस्', रुत्व, विसर्ग भएर 'जग्मुषः' यस्तो रूप हुन्छ । यस्तै प्रकारले टा आदि अजादि विभक्तिमा पनि रूप हुन्छन् । हलादि विभक्तिमा "वसुस्रंसु०"ले दत्व हुन्छ र जगन्वद्भ्याम्, जगन्वद्भिः आदि रूप हुन्छन् । यो जगन्वस् शब्दका शस् सम्मका रूप देखाइए । टा आदि विभक्तिका रूप तल दिइन्छ– जग्मुषा, जगन्वद्भ्याम्, जगन्वद्भिः । जग्मुषे, जगन्वद्भ्याम्, जगन्वद्भ्यः । जग्मुषः, जगन्वद्भ्याम्, जगन्वद्भ्यः । जग्मुषः, जग्मुषोः, जग्मुषाम् । जग्मुषि, जग्मुषोः, जगन्वत्सु ।

**लट इति–** प्रथमान्तले समानाधिकरण नभएमा लट्का स्थानमा शतृ प्रत्यय र शानच् प्रत्यय विकल्पले होऊन् शतृ प्रत्यय परस्मैपद हो । शानच् प्रत्यय आत्मनेपद हो । परस्मैपदी धातुदेखि शतृ हुन्छ । आमनेपदी धातुदेखि शानच् हुन्छ । उभयपदी धातुदेखि शतृ, शानच् दुवै प्रत्यय हुन्छन् । शतृ प्रत्यय सार्वधातुक हुनाले त्यो पर भएमा शप् आदि प्रत्यय हुन्छन् ।

**पचन्तम्–** पच् धातुदेखि लट् लकार भयो, लट्का स्थानमा क्रियाको फल कर्तामा नजाँदा "लटः शतृशानचौ०"ले परस्मैपद शतृ भयो, शकार र ऋको इत्संज्ञा, लोप भयो, शप् पररूप भएर पचत् शब्द बन्यो, त्यसदेखि अम् आयो, नुम्आगम भयो, 'पचन्तम्' भयो । यसको प्रयोग- पचन्तं चैत्रं पश्य (पकाउन लागेको चैतेलाई हेर ।)

**आन इति–** ह्रस्व अकारान्त अङ्गको मुक् आगम होस् आन प्रत्यय पर भएमा ।

**पचमानम्–** पच् धातुदेखि लट्लकार भयो, "लटः शतृ शानचौ०"ले क्रियाको फल कर्तामा गएमा आत्मनेपद शानच् भयो, 'पच्+आन', शप्प्रत्यय, 'पच+आन', "आने मुक्"ले मुक् आगम भयो, पचमान शब्द बन्यो, त्यसदेखि अम् आयो, 'पचमानम्' सिद्ध भयो । यसको प्रयोग- पचमानं चैत्रं पश्य (पकाउन लागेको चैतेलाई हेर ।)

---

लडित्यनुवर्तमाने पुनर्लड्ग्रहणात्प्रथमासामानाधिकरण्येऽपि क्वचित् । सन् द्विजः ॥

**८३०. विदेः शतुर्वसु : ७।१।३६॥**

वेत्तेः परस्य शतुर्वसुरादेशो वा । विदन् । विद्वान् ॥

**८३१. तौ सत् ३।२।१२७॥**

तौ शतृशानचौ सत्संज्ञौ स्तः ॥

**८३२. लृटः सद्वा ३।३।१४॥**

व्यवस्थितविभाषेयम् । तेनाप्रथमासामानाधिकरण्ये प्रत्ययोत्तरपदयोः संवोधने लक्षणहेत्वोश्च नित्यम् । करिष्यन्तं करिष्यमाणं पश्य ॥

**८३३. आक्वेस्तच्छीलतद्धर्मतत्साधुकारिषु ३।२।१३४॥**

क्विपमभिव्याप्य वक्ष्यमाणाः प्रत्ययास्तच्छीलादिषुं कर्तृषु बोध्याः ॥

---

**लडित्यनुवर्तमान इति-** प्रथमा (सु औ जस्)को समानाधिकरण भएका पचमानः, पचमानौ, पचमानाः यी रूप हुन्नन् भन्ने सूत्रको अर्थ हो । तर "वर्तमाने लट्"देखि लगत्तै पछिको यो सूत्र हो यसमा लट् यो अनुवृत्ति आउँछ फेरि यहाँ लटः यो ग्रहण गरेको हुनाले प्रथमान्तले सामानाधिकरण भएमा पनि कहीँ कहीँ प्रयोग हुन्छ । जस्तै- सन् द्विजः (हुन लागेको ब्राह्मण०) । यहाँ प्रथमान्तले समानाधिकरण भएपनि अस् धातुदेखि शतृ प्रत्यय भयो । (यहाँ वृत्तिकारले कहीँ कहीँ भने पनि अहिले यसको पूर्ण रूपमा प्रयोगको प्रचलन भैसकेको छ ।)

**सन् द्विजः** (हुन लागेको ब्राह्मण) (अस् धातुदेखि शतृ प्रत्यय भयो, शप्को लुक् भयो, "श्नसोरल्लोपः"ले अकारको लोप भयो, 'सत्' शब्द बन्यो, त्यसदेखि सु आयो, 'सन्' सिद्ध भयो । यहाँ 'द्विजः' यो प्रथमान्त समानाधिकरण छ ।

**विदेरिति–** विद् धातुदेखि पर रहेका शतृ प्रत्ययका स्थानमा वसु आदेश विकल्पले होस् ।

**विद्वान्-** विद् धातुदेखि लट्, लकारका स्थानमा शतृ प्रत्यय, शतृका स्थानमा "विदेः शतुः०"ले वसु आदेश भयो, विद्वस् शब्द बन्यो, सु आयो, विभक्तिकार्य भयो, 'विद्वान्' सिद्ध भयो । विद्वस् शब्दका सबै रूप सुबन्तमा सिद्ध गरेर देखाइएको छ ।

**विदन्–** शतृका स्थानमा वसु आदेश नभएका पक्षमा विदत् शब्द बन्यो, त्यसदेखि सु आयो, 'विदन्' भयो । विदत् शब्दका रूप भवत् शब्दका जस्तै हुन्छन् ।

**ताविति–** ती शतृ र शानच् प्रत्यय सत्संज्ञक होऊन् ।

**लृट इति–** लृट् लकारका स्थानमा सत्संज्ञक प्रत्यय विकल्पले होऊन् ।

**व्यवस्थितेति**-यो सूत्रमा पढिएको विकल्प व्यवस्थित छ । त्यसकारण अप्रथमान्तले सामानाधिकरण्य भएमा, प्रत्यय पर भएमा, उत्तरपद पर भएमा, संबोधन अर्थमा, लक्षण र हेतु अर्थमा नित्य हुन्छ ।

**करिष्यन्तम्, करिष्यमाणम्-** प्रथमान्तले समानअधिकरण नभएमा कृ धातुदेखि भविष्यत्कालमा लृट् लकार भयो, "तौ सत्"ले शतृ प्रत्यय र शानच् प्रत्ययलाई सत्संज्ञा भयो, "लृटः सद्वा"ले लृट्का स्थानमा उभयपदी धातु हुनाले एक पक्षमा शतृ र अर्को पक्षमा शानच् भयो, 'कृ+अत्', 'कृ+आन' भयो, उभयत्र स्यप्रत्ययको, "ऋद्धनोः०"ले इट् आगम भयो, शानच्का नकारको णत्व भयो, 'करिष्यत्', 'करिष्यमाण' यी दुई प्रातिपदक बने । यी दुवैदेखि अम् आयो । 'करिष्यन्तम्', 'करिष्यमाणम्', यी दुई रूप सिद्ध भए । यसको प्रयोग जस्तै- करिष्यन्तं करिष्यमाणं पश्य (गर्नेवालालाई हेर)

**आक्वेरिति–** यो सूत्रदेखि लिएर क्विप् प्रत्ययसम्मका प्रत्ययहरू तच्छील, तदधर्मः, तत्साधुकारी कर्ता भएमा जान्नू ।

---

**८३४. तृन् ३।२।१३५॥**

कर्ता कटान् ॥

**८३५. जल्पभिक्षकुट्टलुण्टवृङः षाकन् ३।२।१५५॥**

**८३६. षः प्रत्ययस्य १।३।६॥**

प्रत्ययस्यादिः ष इत्संज्ञः स्यात् । जल्पाकः । भिक्षाकः । कुट्टाकः । लुण्टाकः । वराकः । वराकी ॥

**८३७. सनाशंसभिक्ष उः ३।२।१६८॥**

चिकीर्षुः ।

---

**तृन्** धातुदेखि तृन् प्रत्यय होस् उक्त अर्थमा ।

**कर्ता (गर्नेवाला)**– करोति तच्छीलः यस अर्थमा कृ धातुदेखि "तृन्"ले तृन् प्रत्यय भयो, 'कृ+तृ' यहाँ गुण भयो, कर्तृ शब्द बन्यो, सु आयो कर्ता भयो ।

**यसको प्रयोग**– कर्ता कटान् (गुन्द्री बुन्ने शील भएको) यहाँ "कर्तृकर्मणोः कृति"ले पाएको षष्ठी "नलोकाव्ययनिष्ठाखलर्थतृनाम्"ले निषेध हुन्छ र "कर्मणि द्वितीया"ले द्वितीया हुन्छ ।

**जल्पेति**– जल्प धातु, भिक्ष धातु, कुट्ट धातु, लुण्ट धातु, वृङ् धातुदेखि षाकन् प्रत्यय होस्, तच्छील आदि अर्थमा ।

**ष इति**– प्रत्ययका आदिमा रहेको षकार इत्संज्ञक होस् ।

**जल्पाकः**– (बोल्ने शील भएको व्यक्ति) जल्पति तच्छीलः, यस अर्थमा "जल्पभिक्षकुट्टलुण्ट०"ले षाकन्प्रत्यय भयो, नकारको "हलन्त्यम्"ले षकारको "षः प्रत्ययस्य"ले इत्संज्ञा लोप भयो, 'जल्पाक'शब्द सिद्ध भयो, त्यसदेखि सु आयो, 'जल्पाकः' भयो ।

**भिक्षाकः(भिक्षुक)**– भिक्षते तच्छीलः, यस अर्थमा भिक्ष् धातुदेखि उक्त सूत्रले षाकन् प्रत्यय भयो, पूर्ववत् कार्य भयो, 'भिक्षाक'शब्द सिद्ध भयो, त्यसदेखि सु आयो, 'भिक्षाकः' भयो ।

**कुट्टाकः(कुट्ने)**– कुट्टयति तच्छीलः, यस अर्थमा ण्यन्त कुट्टि धातुदेखि षाकन् प्रत्यय भयो, णिलोप भयो, 'कुट्टाक'शब्द सिद्ध भयो, त्यसदेखि सु आयो, 'कुट्टाकः' भयो ।

**लुण्टाकः(चोर)**– लुण्टति तच्छीलः, यस अर्थमा लुण्ट् धातुदेखि पूर्ववत् षाकन् प्रत्यय षकार र नकारको इत्संज्ञा भयो, 'लुण्टाक' शब्द सिद्ध भयो, त्यसदेखि सु आयो, 'लुण्टाकः' भयो ।

**वराकः(विचरा)**– वृणोति तच्छीलः, यस अर्थमा वृङ् (संभक्तौ) धातुदेखि पूर्ववत् षाकन्, षकार र नकारको इत्संज्ञा र ऋकारका स्थानमा अर् गुण भयो, 'वराक'शब्द सिद्ध भयो, सु आयो, 'वराकः' भयो ।

**वराकी(विचरी**– स्त्रीत्व बुझिँदामा वराक शब्ददेखि "षिद्गौरादिभ्यश्च"ले ङीष् प्रत्यय भएपछि 'वराकी'शब्द सिद्ध भयो, त्यसदेखि सु आयो "हल्ङ्याब्भ्यो०"ले लोप भयो, 'वराकी' भयो । वराक शब्द षित् हुनाले ङीष् हुन्छ भन्ने देखाउन यहाँ वराकी शब्द दिएको हो । यस्तै अरू षाकन्प्रत्यान्त शब्ददेखि पनि ङीष् हुन्छ, 'जल्पाकी' आदि रूप हुन्छन् ।

**सनाशंसभिक्ष इति**– सन्नन्त धातु आङ्पूर्वक शंस् धातु र भिक्ष् धातुदेखि उ प्रत्यय होस्, तच्छील आदि अर्थमा ।

**चिकीर्षुः(गर्न इच्छा गर्ने शील भएको)**– चिकीर्षति तच्छीलः यस अर्थमा सन्नन्त चिकीर्ष धातुदेखि "सनाशंस०"ले उप्रत्यय भयो, "अतो लोपः"ले अकारको लोप भयो, 'चिकीर्षु'शब्द सिद्ध भयो, त्यसदेखि सु आयो, 'चिकीर्षुः' भयो ।

---

आशंसुः । भिक्षुः ॥

**८३८. भ्राजभासधुर्विद्युतोर्जिपॄजुग्रावस्तुवः क्विप् ३।२।१७७॥**

विभ्राट् । भाः ॥

**८३९. राल्लोपः ६।४।२१॥**

रेफाच्छ्वोर्लोपः क्वौ झलादौ च क्ङिति । धूः । विद्युत् । ऊर्क् । पूः । दृशिग्रहणस्यापकर्षाज्जवतेर्दीर्घः । जूः ।

---

**आशंसुः(उमेद गर्ने, आशा गर्ने)**– आशंसति तच्छीलः (उमेद गर्ने शील भएको) यस अर्थमा आङ् उपसर्गपूर्वक शंस् धातुदेखि पूर्ववत् उ प्रत्यय भयो, आशंसु शब्द निष्पन्नभयो, सु आयो, 'आशंसुः' भयो ।

**भिक्षुः(भिक्षा माग्ने)**– भिक्षते तच्छीलः यस अर्थमा असरूप प्रत्यय भएकोले "जंल्पभिक्ष०"लाई बाधेर "सनाशंस०"ले उ प्रत्यय भयो, 'भिक्षु'शब्द बन्यो, त्यसदेखि सु आयो, 'भिक्षुः' भयो । यसले उ प्रत्यय नभएको पक्षमा षाकन् प्रत्यय भएको रूप माथि देखाइएको नै छ ।

**भ्राजेति**– भ्राज् धातु, भास् धातु, धुर्व धातु, जि धातु, पॄ धातु, जु धातु, ग्राव शब्द पूर्वमा हुने स्तु धातुदेखि क्विप् प्रत्यय होस् ।

**विभ्राट्(प्रकाशमान)**– विभ्राजले तच्छीलः तद्धर्मः इति वा (चम्कने शील वा स्वभाव भएको) यस अर्थमा वि उपसर्गपूर्वक भ्राज् धातुदेखि "भ्राजभास०"ले क्विप् प्रत्यय भयो, सर्वापहारी लोप भयो, 'विभ्राज्'शब्द बन्यो, प्रातिपदिकत्वात् सु आयो, "हल्ङ्याब्भ्यो०"ले लोप भयो, विभ्राज्का जकारको "व्रश्चभ्रस्ज०"ले षत्व भयो, षकारको जश्त्व, चर्त्व भयो, 'विभ्राट्' रूप सिद्ध भयो ।

**भाः**– यस्तै प्रकारले भासते तच्छीलः, यस अर्थमा भास् धातुदेखि क्विप् प्रत्यय सर्वापहारी लोप भएर भास् शब्द बन्यो, सु आयो, विभक्तिकार्य भयो, 'भाः' सिद्ध भयो ।

**रादिति**– रेफदेखि पर रहेका छकार वकारको लोप होस्, क्विप्प्रत्यय पर भएमा झल् आदिमा हुने कित् ङित् प्रत्यय पर भएमा पनि ।

**धूः**– धुर्व्धातुदेखि "भ्राजभास०"ले क्विप् प्रत्यय, सर्वापहारीलोप भयो, "राल्लोपः"ले वकारको लोप भयो, धुर् शब्द भयो, सुआयो लोप भयो, "र्वोरुपधाया०"ले उपधाको दीर्घ भयो, विसर्ग भयो, 'धूः' भयो । औ जस्मा धुरौ, धुरः इत्यादि रूप र भ्याम्, भिस् आदिमा धूर्भ्याम्, धूर्भिः, आदि रूप हुन्छन् ।

**विद्युत्(बिजुली)**– विद्योतते तच्छीला यस अर्थमा विउपसर्ग पूर्वक द्युत् धातुदेखि पूर्ववत् क्विप् प्रत्यय, सर्वापहारी लोप भयो, कित्त्वाद् गुणनिषेध भयो, विद्युत् शब्द बन्यो, त्यसदेखि सु आयो, लोप भयो, 'विद्युत्' सिद्ध भयो ।

**ऊर्क्/र्ग्(बल)**– यस्तै प्रकारले ऊर्ज् धातुदेखि क्विप् प्रत्यय, सर्वापहारी लोप भयो, ऊर्ज् शब्द बन्यो, त्यसदेखि सु आयो, कुत्व, चर्त्व भयो, 'उर्क्/र्ग्' सिद्ध भयो ।

**पूः**– पॄ धातुदेखि क्विप् प्रत्यय सर्वापहारी लोप, ॠकारका स्थानमा "उदोष्ठ्य"ले उर्आदेश भयो, पुर् शब्द भयो, त्यसदेखि सु आयो, लोप भयो, उपधादीर्घ, विसर्ग भयो, 'पूः' भयो । औ, जस् आदिमा पुरौ पुरः भ्याम् भिस् आदिमा पूर्भ्याम्, पूर्भिः, आदि रूप हुन्छन् ।

"अन्येभ्योऽपि दृश्यते" यो उत्तरसूत्रबाट 'दृश्यते' यो अपकर्ष गरेको हुनाले जु धातुको स्थानमा दीर्घ हुन्छ ।

**जूः**– पूर्ववत् जु धातुदेखि क्विप् प्रत्यय सर्वापहारी लोप भएपछि जु धातुका उकारका स्थानमा दीर्घ भयो, 'जू' शब्द बन्यो, त्यसदेखि सु आयो, 'जूः' सिद्ध भयो ।

---

ग्रावस्तुत् । **वा.**(क्विब्वचिप्रच्छ्यायतस्तुकटप्रुजुश्रीणां दीर्घोऽसम्प्रसारणं च) । वक्तीति वाक् ॥

**८४०. च्छ्वोः शूडनुनासिके च ६।४।१९॥**

सतुक्कस्य छस्य वस्य च क्रमात् श् ऊठ् इत्यादेशौ स्तोऽनुनासिके क्वौ झलादौ च क्ङिति । पृच्छतीति प्राट् । आयतं स्तौतीति आयतस्तूः । कटं प्रवते कटप्रूः । जूरुक्तः । श्रयति हरिं श्रीः ॥

**८४१. दाम्नीशसयुयुजस्तुतुदसिसिचमिहपतदंशनहः करणे ३।२।१८२॥**

दाबादेः ष्ट्रन् स्यात्करणेऽर्थे । दात्यनेन

---

**ग्रावस्तुत्**– ग्रावाणं स्तौति तच्छीलः यस अर्थमा 'ग्राव+ङस्' पूर्वक स्तु धातुदेखि पूर्वसूत्रले क्विप्प्रत्यय, सर्वापहारी लोप, तुक् आगम, समास, विभक्ति लुक् भयो, 'ग्रावस्तुत्' शब्द बन्यो, त्यसदेखि सु आयो, लुक् भयो, 'ग्रावस्तुत्' भयो ।

**(वा०)– क्विब्वचीति**– वच् धातु, प्रच्छ् धातु, आयत शब्द पूर्वमा हुने स्तु धातु कट शब्दपूर्वमा हुने प्रु धातु, जु धातु, श्रि धातुदेखि क्विप् प्रत्यय होस्, धातुका अच्का स्थानमा दीर्घ पनि होस्, संप्रसारण नहोस् ।

दीर्घ सबै धातुको र संप्रसारण निषेध वच् धातु र प्रच्छ धातुको हुन्छ । किनकि संप्रसारण वच् धातु र प्रच्छ धातुमा मात्र "वचिस्वपि०"ले र "ग्रहिज्या०"ले पाउँछ ।

**वाक् (वागिन्द्रिय, वाणी)**– वक्ति तच्छीला यस अर्थमा वच् धातुदेखि क्विप् प्रत्यय, सर्वापहारी लोप, संप्रसारणनिषेध, दीर्घ भयो, 'वाच्'शब्द बन्यो, त्यसदेखि सु आयो, लोप भयो, कुत्व भयो, 'वाक्' भयो ।

**च्छोः शूडिति**– तुक् आगमले सहित छकारका स्थानमा वकारका स्थानमा क्रमैले श् र ऊठ् आदेश होऊन् अनुनासिक पर भएमा, क्वि प्रत्यय पर भएमा र झल् आदिमा हुने कित् ङित् प्रत्यय पर भएमा पनि ।

**प्राट्/ड् (प्रश्नकर्ता)**– पृच्छति तच्छीलः यस अर्थमा प्रच्छ् धातुदेखि क्विप् प्रत्यय, सर्वापहारी लोप संप्रसारणनिषेध, दीर्घ भयो, 'प्राच्छ्' भयो, यहाँ "च्छ्वोःशूडनुनासिके०"ले च्छ्का स्थानमा शकार आदेश भयो, 'प्राश्'शब्द बन्यो, त्यसदेखि सु आयो, लोप भयो, "व्रश्चभ्रस्ज०"ले षत्व भयो, जश्त्व, चर्त्व भयो, 'प्राट्/ड्' भयो । औ, जस् आदिमा प्राशौ, प्राशः, आदि रूप हुन्छन् ।

**आयतस्तूः**– आयत- सविस्तरं यथा, तथा स्तौति यस अर्थमा 'आयत+अम्' पूर्वमा हुने स्तु धातुदेखि उक्त "क्विब्वचि" यो वार्तिकले क्विप् प्रत्यय सर्वापहारी लोप, समास, दीर्घ भयो, 'आयतस्तू' शब्द बन्यो, त्यसदेखि सु आयो, 'आयतस्तूः' भयो । औ, जस्मा आयतस्तुवौ, आयतस्तुवः, आदि रूप हुन्छन् ।

**कटप्रूः**– कटं प्रवते (गुन्द्री बन्छ), यस अर्थमा 'कट+ङस्' पूर्वमा हुने प्रुधातुदेखि उक्त वार्तिकले क्विप्, सर्वापहारी लोप, दीर्घ, समास भयो, 'कटप्रु'शब्द बन्यो, त्यसदेखि सु आयो, 'कटप्रूः' भयो । जु धातुदेखि क्विप् प्रत्यय भएको रूप सूत्रको व्याख्यामा नै बताइयो ।

**श्रीः**– श्रयति हरिम् (विष्णुको आश्रय लिन्छिन्), यस अर्थमा श्रि धातुदेखि उक्त सूत्रले क्विप्, सर्वापहारी लोप, दीर्घ भयो, 'श्री' शब्द बन्यो, त्यसदेखि सु आयो विसर्ग भयो, 'श्रीः' भयो ।

यहाँसम्मका प्रत्यय तच्छीलः, तद्धर्मः, तत्साधुकारी, यी तीन अर्थमा कर्तामा हुन्छन् ।

**दाम्नीति**– दाप्, नी, शस्, यु, युज्, स्तु, तुद्, सि, सिच्, मिह्, पत्, दश्, नह् धातुदेखि करण अर्थमा ष्ट्रन् प्रत्यय होस् ।

---

दात्रम् । नेत्रम् ॥

८४२. **तितुत्रतथसिसुसरकसेषु च ७।२।९॥**

एषां दशानां कृत्प्रत्ययानामिण् न । शस्त्रम् । योत्रम् । योक्त्रम् । स्तोत्रम् । तोत्त्रम् । सेत्रम् । सेक्त्रम् । मेढ्रम् । पत्त्रम् । दंष्ट्रा । नद्ध्री ॥

---

**दात्रम् (हँसिया)**– दाति अनेन (काट्छ यसले) यस अर्थमा दाप्(दा)धातुदेखि "दाम्नीशसयु०"ले ष्ट्रन् प्रत्यय भयो, "षः प्रत्ययस्य"ले षकारको, "हलन्त्यम्"ले नकारको लोप भयो, "एकाच उपदेशे०" ले इट्को निषेध भयो, दात्र शब्द बन्यो, त्यसदेखि सु आयो, अम् भयो, 'दात्रम्' भयो ।

**नेत्रम् (आँखा)**– नयत्यनेन (पुऱ्याउँछ यसले) यस अर्थमा नी धातुदेखि "दाम्नी शस०"ले ष्ट्रन् भयो, पूर्ववत् अनुबन्धलोप, इट् आगको निषेध भयो, 'नेत्र' शब्द बन्यो, सु आयो, 'नेत्रम्' भयो ।

**तितुत्रेति**– ति, तु, त्र, त, थ, सि, सु, सर, क, स, यी दश कृत् प्रत्ययको इट् आगम नहोस् ।

यहाँ ति भन्नाले क्तिन्, क्तिच् र औणादिक ति प्रत्यय, तु भन्नाले औणादिक तुट् प्रत्यय, त्र भन्नाले प्रस्तुत ष्ट्रन् प्रत्यय, त, थ, सि, सु, सर, क, स, यी औणादिक प्रत्यय ग्रहण गरिन्छन् ।

यिनका उदाहण क्रमशः- तन्तिः, सक्तुः, दात्रम्, हस्तः, कण्ठः, कुक्षिः, इक्षुः, अक्षरम्, शल्कः, वत्सः, आदि हुन् ।

**शस्त्रम् (हतियार)**– शस् धातुदेखि करण अर्थमा शसति अनेन यस अर्थमा ष्ट्रन् प्रत्यय भयो, 'शस्+त्र' यहाँ "आर्धधातुकस्येड्०"ले इट् आगम पाएमा "तितुत्रतथ०"ले निषेध भयो, 'शस्त्र' शब्द बन्यो, त्यसदेखि सु आयो, 'शस्त्रम्' भयो ।

**योत्रम् (जोतारो)**– यौति अनेन (बाँध्छ यसले) यस अर्थमा यु धातुदेखि उक्त सूत्रले ष्ट्रन् प्रत्यय भयो, "तितुत्र०"ले इट् आगमको निषेध, गुण भयो, 'योत्र' शब्द बन्यो, सु आयो, 'योत्रम्' भयो ।

**योक्त्रम् (जोतारो)**– युनक्ति अनेन (जोड्छ यसले) यस अर्थमा पूर्ववत् युज् धातुदेखि ष्ट्रन् प्रत्यय भयो, "एकाच०"ले इट्को निषेध, गुण, कुत्व भयो, 'योक्त्र' शब्द बन्यो, सु आयो, 'योक्त्रम्' भयो ।

**स्तोत्रम् (देवताको स्तुति)**– स्तु धातुदेखि स्तौति अनेन यस अर्थमा पूर्ववत् ष्ट्रन् प्रत्यय, इट् आगमको निषेध, गुण, 'स्तोत्र' शब्द बन्यो, त्यसदेखि सु आयो, 'स्तोत्रम्' भयो ।

**तोत्त्रम् (छडी)**–तुदति अनेन (पिट्छ यसले) यस अर्थमा तुद् धातुदेखि पूर्ववत् ष्ट्रन् प्रत्यय, इट् आगमको निषेध, उपधागुण भयो, 'तोत्त्र' शब्द बन्यो, त्यसदेखि सु आयो, 'तोत्त्रम्' भयो ।

**सेत्रम् (डोरी)**- सिनाति अनेन यस अर्थमा सि धातुदेखि पूर्ववत्, ष्ट्रन् प्रत्यय आदि क्रिया भयो, 'सेत्र' शब्द बन्यो, सु आयो, 'सेत्रम्' भयो ।

यस्तै प्रकारले सेक्त्रम् (सेचनपात्र) सिञ्चति अनेन यस अर्थमा 'सिच्+त्र', गुण, कुत्व, सेक्त्र, सेक्त्रम् ।

**मेढ्रम् (लिङ्ग)**-मेहति अनेन यस अर्थमा मिह् धातुदेखि ष्ट्रन् प्रत्यय भयो, 'मिह+त्र' यहाँ इट् आगमको निषेध, गुण, ढत्व, धत्व, ष्टुत्व र ढलोप भयो, 'मेढ्र'शब्द बन्यो, सु आयो, मेढ्रम् भयो ।

**पत्त्रम् (वाहन)**- पतति अनेन यस अर्थमा पूर्ववत् ष्ट्रन् प्रत्यय भएर 'पत्त्र' शब्द बन्यो, त्यसदेखि सु आयो र रूप सिद्ध भयो ।

**दंष्ट्रा (दाह्रा)**- दशति अनेन यस अर्थमा पूर्ववत् ष्ट्रन् प्रत्यय भएर 'दंष्ट्रा' शब्द बन्यो, त्यसदेखि सु आयो र रूप सिद्ध भयो ।

**नद्ध्री (छालाको डोरी)**- नह्यति अनेन यसर्थमा नह् धातुदेखि ष्ट्रन् प्रत्यय भएर 'नंद्ध्र' शब्द भयो, स्त्रीत्व विवक्षामा त्यसदेखि "षिद्गौरादिभ्यश्च"ले ङीष् भयो, 'नद्ध्री' शब्द बन्यो,

---

**८४३. अर्तिलूधूसूखनसहचर इत्रः ३।२।१८४।।**

अरित्रम् । लवित्रम् । धवित्रम् । सवित्रम् । खनित्रम् । सहित्रम् । चरित्रम् ॥

**८४४. पुवः संज्ञायाम् ३।२।१८५।।**

पवित्रम् ॥

## इति पूर्वकृदन्तम्

---

त्यसदेखि सु आयो र रूप सिद्ध भयो ।

नद्धी शब्दमा "नहो धः"ले धत्व र "झषस्तथोः"ले धत्व, जश्त्व हुन्छ । स्त्रीत्व हुनुमा लोक नै प्रमाण छ । दंष्ट्रा यहाँ षित् कार्य अनित्य हुनाले ङीष् हुँदैन भन्ने कसैको मत छ । दंष्ट्रा शब्द अजादिगणभित्र हुनाले ङीष प्रत्ययलाई बाधेर टाप् प्रत्यय हुन्छ भन्ने कसैको मत छ । यहाँ इट् आगमको निषेध शस् धातुमा, यु धातुमा र पत् धातुमा "तितुत्रतथ०"ले अन्यत्र "एकाच उपदेशे०"ले हुन्छ । सेट् धातु यी तीन मात्र छन् ।

**अर्तीति**– ऋ, लू, धू, सू, खन, सह, चर, यी धातुदेखि इत्र प्रत्यय होस्, करण अर्थमा "तितुत्र०"ले इट् आगमको निषेध प्राप्त हुने हुनाले यी धातुदेखि इत्र प्रत्यय गरिएको हो । आर्धधातुक इत्र प्रत्यय पर हुनाले धातुका अच्का स्थानमा गुण हुन्छ, ।

**अरित्रम्(डुङ्गा चलाउने काठ)**– इयर्ति अनेन यस अर्थमा ऋ धातुदेखि "अर्तिलू०"ले इत्र प्रत्यय भयो, अर्‌गुण भयो, 'अरित्र' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अरित्रम्' भयो ।

**लवित्रम् (हँसिया)**– लुनाति अनेन पूर्ववत् 'लवित्रम्' भयो ।

**धवित्रम् (पङ्खा)**– धुनात्यनेन पूर्ववत् 'धवित्रम्' भयो ।

**खनित्रम् (खन्ती)**– खनति अनेन पूर्ववत् 'खनित्रम्' भयो ।

**सहित्रम् (छाता, घूम)**– सहते आतपादि अनेनन पूर्ववत् 'सहित्रम्' भयो ।

**चरित्रम् (आचरण)**– चरति अनेन जगति पूर्ववत् 'चरित्रम्' भयो ।

**पुव इति**– पू धातुदेखि इत्र प्रत्यय होस्, करण अर्थमा संज्ञा बुझिँदामा ।

**पवित्रम् (कुशको औंठी)**– पुनाति अनेन यस अर्थमा पू धातुदेखि इत्र प्रत्यय, गुण, अव् आदेश भयो, 'पवित्र' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पवित्रम्' भयो ।

**पूर्वकृदन्त समाप्त भयो ।**

-----------------

## अथोणादयः

**उ.सू.** (कृवापाजिमिस्वदिसाध्यशूभ्य उण् ॥१॥) करोतीति कारुः । वातीति वायुः । पायुर्गुदम् । जायुरौषधम् । मायुः पित्तम् । स्वादुः । साध्नोति परकार्यमिति साधुः । आशु शीघ्रम् ॥

**८४५. उणादयो बहुलम् ३।३।१॥**

एते वर्तमाने सञ्ज्ञायां च बहुलं स्युः । केचिदविहिता अप्यूह्याः ॥

संज्ञासु धातुरूपाणि प्रत्ययाश्च ततः परे ।
कार्याद्विद्यादनूबन्धमेतच्छास्त्रमुणादिषु ॥

**इत्युणादिप्रकरणम् ॥**

---

**अब उणादि शुरू हुन्छ ।**

(उ. सू.) **कृवापेति**– कृ, वा, पा, जि, मि, स्वद्, साध्, अश् धातुदेखि उण् प्रत्यय होस् ।

**कारुः(कर्मी)**– कृ धातुदेखि करोति यस अर्थमा "कृवापा०" यो सूत्रले उण् प्रत्यय भयो, 'कृ+उ' भयो, उ प्रत्यय णित् हुनाले "अचोञ्णिति"ले आर्वृद्धि भयो,'कारु' शब्द बन्यो, त्यसदेखि सु आयो, 'कारुः' भयो । 'कारुः शिल्पी' (अमरकोश) ।

**वायुः(हावा)**– वातीति (हिंड्छ र गन्ध चलाउँछ) भन्ने अर्थमा वा धातुदेखि "कृवापा०"ले उण्, "आतो युक्"ले युक् आगम भयो, 'वायु' शब्द बन्यो, त्यसदेखि सु आयो 'वायुः' भयो ।

**पायुः(गुद्रेन्द्रिय)**– पाति (मलनिरसेन प्राणिनः) यस अर्थमा पा धातुदेखि उण् प्रत्यय भयो, पूर्ववत् कार्य भयो, 'पायु' शब्द बन्यो, सु आयो, 'पायुः' भयो ।

**मायुः(पित्त)**– मिनोति (देहे उष्माणम्) यस अर्थमा मि धातुदेखि उक्त सूत्रले उण् प्रत्यय भयो, वृद्धि, आय् आदेश भयो, 'मायु' शब्द बन्यो, त्यसदेखि सु आयो, 'मायुः' भयो ।

**स्वादुः(मीठो)**– स्वदते (राम्रो स्वाद दिन्छ) यस अर्थमा स्वद् धातुदेखि उक्त सूत्रले उण् प्रत्यय भयो, वृद्धि भयो, 'स्वादु' शब्द बन्यो, त्यसदेखि सु आयो, 'स्वादुः' भयो ।

**साधुः(सज्जन)**– (साध्नोति परकार्यम्) यस अर्थमा साध् धातुदेखि उक्त सूत्रले उण् प्रत्यय भयो, 'साधु' शब्द बन्यो, त्यसदेखि सु आयो, 'साधुः' भयो ।

**आशु(चाँडो)**– अश्नोति यस अर्थमा अश् धातुदेखि उण्, उपधावृद्धि भयो, 'आशु' शब्द बन्यो, त्यसदेखि सु आयो, नपुंसकत्वात् लुक् भयो, 'आशु' भयो ।

आशु शब्द द्रव्यवाचक नभएमा नपुंसकमा र विशेषण भएमा विशेष्यनिघ्न अर्थात् त्रिलिङ्गी हुन्छ । यो शब्द अव्ययमा पनि छ ।

**उणादय इति**– उणादि प्रत्ययहरू वर्तमानकालमा, संज्ञा अर्थ बुझिँदामा बहुल प्रकारले होऊन् । कुनै प्रत्ययहरू त नकहिएका भए पनि कल्पना गरेर बनाउन सकिन्छन् ।

**संज्ञास्विति**– संज्ञा शब्दमा जुन धातुको संभावना रहन्छ त्यस्ता धातुको स्वरूप आफ्नै

## अथोत्तरकृदन्तप्रकरणम्

**८४६. तुमुन्ण्वुलौ क्रियायां क्रियार्थायाम् ३।३।१०॥**

क्रियार्थायां क्रियायामुपपदे भविष्यत्यर्थे धातोरेतौ स्तः । मान्तत्वादव्ययत्वम् । कृष्णं द्रष्टुं याति । कृष्णं दर्शको याति ।

**८४७. कालसमयवेलासु तुमुन् ३।३।१६७॥**

कालार्थेषूपपदेषु तुमुन् ।

---

विचारले कल्पना गर्नू । त्यसदेखि पर प्रत्ययको कल्पना गर्नू । त्यस प्रत्ययमा पनि गुण, वृद्धि आदि कार्य हेरेर अनुबन्धको कल्पना गर्नू । यो उणादिको अनुशासन हो ।

जस्तै–शङ्कुला शब्दमा शङ्क् धातुदेखि उलच् प्रत्यय गरेमा शङ्कुला शब्द निष्पन्न हुन्छ ।

**उणादि प्रकरण समाप्त भयो ।**

---

**अब उत्तरकृदन्तप्रकरण शुरू हुन्छ ।**

**तुमुनिति**– क्रियानिमित्तक क्रिया उपपद भएमा भविष्यत् अर्थमा धातुदेखि तुमुन् र ण्वुल् प्रत्यय होऊन् । 'तुमुन्'को उन् 'ण्वुल्'को णकार र लकार अनुबन्ध छन् । तुमुन् प्रत्यय मकारान्त हुनाले "कृन्मेजन्तः"ले अव्ययसंज्ञा हुन्छ ।

**कृष्णं द्रष्टुं याति**– (कृष्णलाई देख्न जान्छ) यहाँ जानु क्रिया देख्नु क्रियाको निमित्त छ । क्रियानिमित्त क्रिया 'याति' यो उपपद क्रिया छ । "तत्रोपपदं सप्तमीस्थम्" यो सूत्र अनुसार सप्तमीस्थ क्रिया वाच्यत्वेन स्थित छ र भविष्यत् अर्थमा वर्तमान दृश् धातुदेखि तुमुन् भयो । "सृजिदृशोः०"ले अम् आगम, यण् भयो, "व्रश्चभ्रस्ज०"ले शकारको षकार भयो, ष्टुत्व भयो, 'द्रष्टुम्' शब्द बन्यो, मान्त कृत् हुनाले "कृन्मेजन्तः"ले अव्ययसंज्ञा भयो, अव्ययत्वात् सुप्को लुक् भयो, 'द्रष्टुम्' सिद्ध भयो । कर्मवाचक शब्द कृष्णदेखि "कर्तृकर्मणोः०"ले पाएको षष्ठी "नलोक०"ले अव्ययको कर्म हुनाले निषेध भयो र "कर्मणि द्वितीया"ले द्वितीया विभक्ति भयो । 'कृष्णं द्रष्टुं याति' सिद्ध भयो ।

**कृष्णं दर्शको याति**– (कृष्णलाई देख्ने व्यक्ति जान्छ) यहाँ पनि 'याति' यो उपपद क्रिया हुनाले भविष्यदर्थक दृश् धातुदेखि ण्वुल् प्रत्यय भयो, वुका स्थानमा "युवोरनाकौ"ले अक आदेश भयो, गुण भयो, 'दर्शक'शब्द बन्यो, सु आयो, 'दर्शकः' भयो । यसको कर्म वाचक कृष्ण शब्ददेखि "कर्तृकर्मणोः०"ले पाएको षष्ठी "अकेनोः०"ले निषेध भएपछि "कर्मणि द्वितीया"ले द्वितीयाविभक्ति भयो, 'कृष्णं दर्शको याति' सिद्ध भयो ।

**कालेति**– कालार्थक शब्द उपपद भएमा धातुदेखि तुमुन् होस् ।

कालः समयो वेला वा भोक्तुम् ॥

**८४८. भावे ३।३।१८॥**

सिद्धावस्थापन्ने धात्वर्थे वाच्ये धातोर्घञ्। पाकः ॥

**८४९. अकर्तरि च कारके संज्ञायाम् ३।३।१९॥**

कर्तृभिन्ने कारके घञ् स्यात् ॥

**८५०. घञि च भावकरणयोः ६।४।२७॥**

रञ्जेर्नलोपः स्यात्। रागः। अनयोः किम् ? रज्यत्यस्मिन्निति रङ्गः ॥

**८५१. निवासचितिशरीरोपसमाधानेष्वादेशच्च कः ३।३।४१॥**

एषु चिनोतेर्घञ् आदेशच्च ककारः। उपसमाधानं राशीकरणम्।

---

**कालः समयो वेला वा भोक्तुम्**– (खाने वेला भयो) यहाँ कालार्थक शब्द उपपद भएकोले भुज् धातुदेखि तुमुन् प्रत्यय, गुण, कुत्व, चर्त्व भयो, 'भोक्तुम्' शब्द बन्यो, त्यसदेखि सु आयो, अव्ययत्वात् लुक् भयो, 'भोक्तुम्' भयो।

काल, समय, वेला यी कर्म हैनन् र यिनबाट प्रातिपदिकार्थमा प्रथमा भयो।

**भावे**– सिद्धावस्थापन्न धात्वर्थ वाच्य भएमा धातुदेखि घञ् प्रत्यय होस्।

घञ्को घकार र ञकार अनुबन्ध हुन् र यिनको लोप हुन्छ अ बाँकी रहन्छ। धातुका अर्थ साध्य र सिद्ध दुई हुन्छन्। तिङन्तक्रियाको धात्वर्थ साध्य हुन्छ। कृदन्त क्रियाको धात्वर्थ सिद्धावस्थापन्न हुन्छ र त्यो द्रव्यवत् प्रतीत हुन्छ। यसैले भनिएको छ "कृदभिहितो भावो द्रव्यवत् प्रकाशते", अतः यहाँ भाव अर्थमा निष्पन्न शब्दबाट लिङ्ग, वचन सबै हुन्छन्।

"घञबन्तः" यो लिङ्गानुशानसूत्र अनुसार घञ् प्रत्ययान्त शब्द पुंलिङ्गी हुन्छ।

**पाकः**– पचनम् (पकाउनु) यस अर्थमा पच् धातुदेखि "भावे"ले घञ् प्रत्यय, अनुबन्ध लोप भयो, 'पच्+अ', वृद्धि भयो, "चजो कु०"ले कुत्व भयो, 'पाक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पाकः' भयो।

**अकर्तरीति**– कर्ता भिन्न कारक अर्थमा धातुदेखि घञ् प्रत्यय होस्, संज्ञा बुझिँदामा।

**घञि चेति**– भाव र करण अर्थमा गरिएको घञ् प्रत्यय पर भएमा रञ्ज् धातुका नकारको लोप होस्।

**रागः**– रञ्जनम्, रज्यते अनेन वा यस विग्रहमा भाव अर्थमा "भावे"ले र करण अर्थमा "अकर्तरि च०"ले घञ् भयो, 'रञ्ज्+अ' यहाँ "घञि च०"ले धातुका नकारको लोप, वृद्धि, कुत्व भयो, 'राग' शब्द बन्यो, त्यसदेखि सु आयो 'रागः' भयो।

रँगाउनु क्रिया, रँगाउने रङ-नीलो, पँहेलो, हरियो, रातो आदिलाई राग भनिन्छ।

**अनयोः किमिति**– "घञि च भावकरणयोः" यस सूत्रमा "भावकरणयोः" किन भन्ने ? न भन्ने हो भने रञ्ज् धातुदेखि "अकर्तरि च०"ले अधिकरण अर्थमा घञ् प्रत्यय भयो, 'रञ्ज्+अ' यहाँ पनि घञ् प्रत्यय पर हुनाले रञ्ज् धातुका नकारको लोप होला, सो नहोस् भनेर सूत्रमा "भावकरणयोः" पढियो, यहाँ भाव र करण अर्थमा विधान गरिएको घञ् प्रत्यय पर नहुनाले नकारको लोप भएन, जकारको "चजोः कु०"ले कुत्व भयो, नकारको अनुस्वार परसवर्ण भयो, 'रङ्ग' शब्द बन्यो, सु आयो, 'रङ्गः'भयो। रङ्ग शब्दको अर्थ नाटक देखाउने स्थल-रङ्गभूमि हो।

**निवासेति**– निवास, चिति, शरीर, उपसमाधान यी अर्थ बुझिँदामा चि धातुदेखि घञ् प्रत्यय होस्, चकारका स्थानमा ककार पनि होस्।

**उपसमाधानमिति**– उपसमाधान भनेको थुप्रो बनाउनु हो।

निकायः । कायः । गोमयनिकायः ॥

**८५२. एरच् ३।३।५६॥**

इवर्णान्तादच् । चयः । जयः ॥

**८५३. ॠदोरप् ३।३।५७॥**

ॠवर्णान्तादुवर्णान्ताच्चाप् । करः । गरः । यवः । लवः । स्तवः ।

---

**निकायः (घर)**– नि उपसर्ग पूर्वक चि धातुदेखि 'निचीयते धान्यादिकमस्मिन्' (थुपारिन्छ धान अदि अन्न यहाँ) यस विग्रहमा, अधिकरण अर्थमा घञ् भयो, 'निचि+अ' यहाँ चकारको ककार भयो वृद्धि आय् आदेश भयो, 'निकाय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'निकायः' भयो । 'निकायनिलयालयाः' (अमरकोश )

**आकायम्**– चिति अर्थमा 'आचीयन्तेऽस्मिनिष्टकाः' यस विग्रहमा अधिकरण अर्थमा घञ् भएर पूर्ववत् 'आकाय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'आकायम्' भयो ।

इट्टाहरू मिलाइने अग्निस्थललाई आकाय भनिन्छ । 'आकायमग्निं चिन्वीत' ( वेद )

**कायः (शरीर)**– चीयते अस्थ्यादिकमस्मिन् (जम्मा हुन्छन् हाड आदि यसमा) यो विग्रहमा अधिकरण अर्थमा चि धातुदेखि घञ् चकारको कुत्व, वृद्धि, आय् आदेश भयो, 'काय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'कायः' भयो । 'कायो देहः' (अमरकोश)

**गोमयनिकायः (गोबरको थुप्रो)**– निउपसर्ग पूर्वक चि धातुदेखि थुप्रो (राशीकरण) अर्थ बुझिँदामा घञ् आदि पूर्ववत् भयो, 'निकाय' शब्द बन्यो, निकाय शब्दसँग गोमय शब्दको 'गोमयस्य निकायः' यो विग्रहमा षष्ठी समास भयो, 'गोमयनिकाय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'गोमयनिकायः' भयो ।

**एरिति**– इवर्णान्त धातुदेखि [१२०] भाव र कर्तृभिन्नकारक अर्थमा घञ्प्रत्यय होस् ।

**चयः (जम्मा गर्नु)**– चयनम् यो अर्थमा चि धातुदेखि "भावे"लाई बाधेर "एरच्"ले इवर्णान्त धातु हुनाले अच् प्रत्यय भयो, गुण, अव् आदेश भयो, 'चय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'चयः' भयो ।

**जयः (जित्नु)**– जयनं यो अर्थमा पूर्ववत् घञ्लाई बाधेर अच् प्रत्यय भयो, गुण, अय् आदेश भयो, 'जय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'जयः' भयो ।

**ॠदोरिति**– दीर्घ ॠकारान्त धातु र उवर्णान्त धातुदेखि अप् प्रत्यय होस्, भाव र कर्तृ भिन्नकारक अर्थमा ।

**करः (हात)**– किरति अनेन (फ्याँक्छ यसले) यो अर्थमा कॄ धातुदेखि "ॠदोरप्"ले अप् प्रत्यय भयो, ॠकारका स्थानमा अर् गुण भयो, 'कर' शब्द बन्यो, त्यसदेखि सु आयो 'करः' भयो ।

**गरः (विष)**– गीर्यते (शिवेन) यस अर्थमा कर्म अर्थमा गॄ धातुदेखि "ॠदोरप"ले अप् प्रत्यय, ॠकारका स्थानमा अर्गुण भयो, 'गर' शब्द बन्यो, त्यसदेखि सु आयो, 'गरः' भयो ।

'गरं ददुः कुमाराय दुर्मर्षा नृपतिं प्रति' (श्रीमद् भागवत ६।१४।४३ )

**यवः** (जौ) यूयते अम्भसा (जलसँग मिसिन्छ) यस अर्थमा यु धातुदेखि कर्ममा अप् प्रत्यय भयो, गुण, अव् आदेश भयो, 'यव' शब्द बन्यो, त्यसदेखि सु आयो, 'यवः' भयो । पूजा गर्दा जौ जलमा मिसाइन्छ ।

**लवः (काट्ने काम)**– लवनम् यस अर्थमा लू धातुदेखि भावमा पूर्ववत् अप् प्रत्यय, गुण, अव् आदेश भयो, 'लव' शब्द बन्यो, त्यसदेखि सु आयो, 'लवः' भयो । 'लवोऽभिलावो लवने' (अमरकोश)

**स्तवः (स्तुति)**– स्तु धातुदेखि स्तवनम् वा स्तूयते अनेन यस विग्रहमा भाव आदि अर्थमा

---

१२० "भावे", "अकर्तरि च कारके" इति प्रकृतमनुवर्तते "कृत्यल्युटो बहुलम्" इति यावत्" यो काशिकामा भनेको छ ।

पवः ॥ **वा.**( घञर्थे कविधानम् ) । प्रस्थः । विघ्नः ॥

**८५४. ड्वितः क्त्रिः ३।३।८८॥**

**८५५. क्त्रेर्मम्नित्यम् ४।४।२०॥**

क्त्रिप्रत्ययान्तान्मप् निर्वृत्तेऽर्थे । पाकेन निर्वृत्तं पक्त्रिमम् ॥ **डुवप्** उप्त्रिमम् ॥

**८५६. ट्वितोऽथुच् ३।३।८९॥**

**टुवेपृ** कम्पने, वेपथुः ।

---

पूर्ववत् अप् प्रत्यय गुण, अव् आदेश भयो, 'स्तव' शब्द बन्यो, त्यसदेखि सु आयो, 'स्तवः' भयो । 'स्तवः स्तोत्रं स्तुतिर्नुतिः' (अमरकोश )

**पवः (धान आदि बत्ताउनु)**– पवनम् यस अर्थमा पू धातुदेखि पूर्ववत् भावमा घञ् प्रत्यय गुण, अव् आदेश भयो, 'पव' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पवः' भयो । 'निष्पावः पवने पवः' इत्यमरः ।

**(वा) घञर्थे इति**– घञ् प्रत्ययको अर्थमा सबै धातुदेखि क प्रत्यय होस् ।

**प्रस्थः (पाथी, पहाडको चुचुरो)**– प्रतिष्ठन्ते धान्यान्यस्मिन् यस अर्थमा प्र उपसर्ग पूर्वक स्था धातुदेखि अधिकरणमा क प्रत्यय भयो, 'प्रस्था+अ' यहाँ "आतो लोप इटि च"ले आकारको लोप भयो, 'प्रस्थ'शब्द बन्यो, त्यसदेखि सु आयो, 'प्रस्थः' भयो । यसमा प्रतिष्ठन्ते जना अस्मिन् यो विग्रह राखेमा पहाडको चुचुरो भन्ने अर्थ बुझिन्छ ।

**विघ्नः (अड्चन)**– विहन्यन्ते मनांसि अनेन यस विग्रहमा वि उपसर्गपूर्वक हन् धातुदेखि करण अर्थमा "घञर्थे०" यो वार्तिकले कप्रत्यय भयो, 'विहन्+अ' भयो, "गमहनजन०"ले उपधाको लोप, "हो हन्तेर्ञ्णिन्नेषु"ले कुत्व भयो, 'विघ्न' शब्द बन्यो, सु आयो 'विघ्नः' भयो । 'विघ्नोऽन्तरायः प्रत्यूहः'(अमरकोश)

**ड्वित इति**– डुको इत्संज्ञा हुने धातुदेखि [१२१] भाव अर्थमा क्त्रि प्रत्यय होस् । ककारको इत्संज्ञा लोप हुन्छ ।

**क्त्रेर्मबिति**– क्त्रि प्रत्ययान्त धातुदेखि मप् प्रत्यय होस्, निर्वृत्त अर्थमा ।

**पक्त्रिमम् (पाकेर तयार भएको)**– पाकेन निर्वृत्तम् (पकाएर सिद्ध गरिएको) यस विग्रहमा पच् धातुदेखि भाव अर्थमा क्त्रि प्रत्यय भयो, पच्का चकारको कुत्व भएर पक्त्रिम भएपछि, "क्त्रेर्मप्०"ले नित्य मप्प्रत्यय भयो, अनुबन्ध लोप भयो, 'पक्त्रिम' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पक्त्रिमम्' भयो । यहाँ पक्त्रिको अर्थ 'पाक' हो, 'मप्'को अर्थ 'सिद्ध' हो । सूत्रमा नित्यशब्द ग्रहण गरेको स्वतन्त्र पक्त्रि शब्दको प्रयोग हुन्न भन्ने देखाउन हो । यसैले 'पक्त्रिणा निर्वृत्तम्' यस्तो लौकिक विग्रह भएन ।

**उप्त्रिमम् (बीउ छरेको खेत)**– वापेन निर्वृत्तम् (बीउ छरेर सिद्ध भएको) यस विग्रहमा वप् धातुदेखि "ड्वितः क्त्रिः"ले क्त्रिप्रत्यय भयो, "क्त्रेर्मप्०"ले मप्प्रत्यय भयो, क्त्रिमा कित्त्व हुनाले "वचिस्वपियजादीनां०"ले संप्रसारण, पूर्वरूप भयो, 'उप्त्रिम' शब्द बन्यो, त्यसदेखि सु आयो 'उप्त्रिमम्' सिद्ध भयो ।

यस्तै प्रकारले क्रियया निर्वृत्तम् यस विग्रहमा 'कृत्रिमम्', दानेन निर्वृत्तम् यस विग्रहमा 'दत्त्रिमम्', भरणेन निर्वृत्तं यस विग्रहमा 'भृत्रिमम्' आदि शब्दहरूको पनि ऊह गर्नू ।

**ट्वित इति**– टुको इत्संज्ञा हुने धातुदेखि भावादि अर्थमा अथुच् होस् ।

**वेपथुः (काम्नु)**– वेपनम् यस विग्रहमा वेप् धातुदेखि "ट्वितोऽथुच्"ले अथुच् प्रत्यय भयो, 'वेपथु'शब्द बन्यो, त्यसदेखि सु आयो, 'वेपथुः' भयो ।

---

१२१ हुन त यहाँ "अर्कतरि च कारके", "भावे" यो दुवै अनुवृत्ति आउँछ, तर "अयं भाव एव स्वभावात्" यो सिद्धान्त कौमुदीमा भनिएको छ ।

**८५७. यजयाचयतविच्छप्रच्छरक्षो नङ् ३।३।९०॥**

यज्ञः । याच्ञा । यत्नः । विश्नः । प्रश्नः ।रक्ष्णः ॥

**८५८. स्वपो नन् ३।३।९१॥**

स्वप्नः ॥

**८५९. उपसर्गे घोः किः ३।३।९२॥**

प्रधिः ।

---

**यजेति**– यज्, याच्, यत्, विच्छ, प्रच्छ, रक्ष् धातुदेखि भाव आदि अर्थमा नङ् प्रत्यय होस् । ङकारको इत्संज्ञा, लोप हुन्छ ।

**यज्ञः(जग्गे)**– यजनम्, अथवा यजति देवान् अनेन, यस विग्रहमा यज् धातुदेखि "यजयाचयत०"ले नङ् प्रत्यय भयो, 'यज्+न', चुत्व, जकार र ञकार मिलेर ज्ञ भयो, 'यज्ञ' शब्द बन्यो, त्यसदेखि सु आयो, 'यज्ञः' भयो ।

**याच्ञा(माग्नु)**– याचनम् यस विग्रहमा याच् धातुदेखि "यजयाचयत०"ले नङ् भयो, चुत्व भयो, याच्ञ भयो, स्त्रीत्वात् टाप् प्रत्यय भयो, 'याच्ञा' शब्द बन्यो, त्यसदेखि सु आयो, लोप भयो, 'याच्ञा' भयो ।

**यत्नः(प्रयत्न)**– यतनम् यस विग्रहमा यत् धातुदेखि नङ् प्रत्यय भयो, 'यत्न' शब्द बन्यो, 'यत्नः' भयो ।

**विश्नः(हिंडाइ)**– [१२२]विच्छनम् यस विग्रहमा "यजयाचयत०"ले विच्छ धातुदेखि नङ् भयो, 'विच्छ+न', "च्छ्वोः शूडनुनासिके च"ले च्छ्का स्थानमा श् भयो, 'विश्न' शब्द बन्यो, त्यसदेखि सु आयो, 'विश्नः' भयो ।

**प्रश्नः(सोधाइ)**– प्रच्छनम् यस अर्थमा प्रच्छ धातुदेखि पूर्वसूत्रले नङ् प्रत्यय, च्छ्का स्थानमा शकार भयो, प्रश्न शब्द बन्यो, सु आयो 'प्रश्नः' भयो । यहाँ 'ग्रहिज्यावयि०'ले संप्रसारण किन भएन त ? "प्रश्ने चासन्नकाले" यो सूत्रमा रहेको प्रश्न शब्द ज्ञापक छ ।

**रक्ष्णः(रक्षा)**– रक्षणम् (रक्षा गर्नु) यस विग्रहमा रक्ष् धातुदेखि पूर्व सूत्रले नङ् प्रत्यय भयो, रक्ष्को षकारदेखि पर हुनाले नकारको णत्व भयो, 'रक्ष्ण' शब्द बन्यो, त्यसदेखि सु आयो, 'रक्ष्णः' भयो । 'रक्ष्णःस्त्राणे' (अमरकोश )

**स्वप इति**– स्वप् धातुदेखि नन् प्रत्यय होस्, भाव आदि अर्थमा ।

**स्वप्नः(सुत्नु)**– स्वपनम् यस विग्रहमा स्वप् धातुदेखि "स्वपो नन्"ले नन् प्रत्यय भयो, 'स्वप्न' शब्द बन्यो, त्यसदेखि सु आयो, 'स्वप्नः' भयो । 'स्यान्निद्रा शयनं स्वापः स्वप्नः संवेश इत्यपि' (अमरकोश)

घञ्, अच्, अप्, नङ्, ण, घ, अथुच्प्रत्ययान्त शब्द पुंलिङ्गी हुन्छन् । "घञजब्नङ्णघाथुचः" यो अमरकोषको परिभाषा अनुसार नङ् प्रत्ययान्त याच्ञा शब्द पुंलिङ्गी हुनुपर्ने तर "याच्ञा स्त्रियाम्" यो लिङ्गानुशासनको सूत्र अनुसार याच्ञा शब्द स्त्रीलिङ्गमा रहन्छ ।

**उपसर्गे इति**– उपसर्ग पूर्वमा हुने घुसंज्ञक धातुदेखि कि प्रत्यय होस्, भाव र कर्तृभिन्न कारक अर्थमा ।

**प्रधिः(चक्काको धार)**– प्रधीयते अनेन यस विग्रहमा करण अर्थमा प्र उपसर्गपूर्वक धा धातुदेखि "उपसर्गे घोःकिः"ले कि प्रत्यय भयो, धाको आकारको लोप भयो, 'प्रधि'शब्द बन्यो,

---

१२२ विच्छ गतौ । तुदादिः ।

उपधिः ॥

**८६०. स्त्रियां क्तिन् ३।३।९४॥**

स्त्रीलिङ्गे भावे क्तिन्। घञोऽवादः। कृतिः। स्तुतिः। **वा**.(ऋल्वादिभ्यः क्तिन्निष्ठावद्वाच्यः)। तेन नत्वम्। कीर्णिः। लूनिः। धूनिः। पूनिः। **वा**.(संपदादिभ्यः क्विप्)। संपत्। विपत्। आपत्।

---

त्यसदेखि सु आयो, 'प्रधिः' भयो। घुसंज्ञक धातुदेखि गरिएको कि प्रत्ययान्त शब्द पुंलिङ्गी हुन्छ। "क्यन्तो घुः" लिङ्गानुशासन सूत्र, 'नेमिः स्त्री स्यात् प्रधिः पुमान्' (अमरकोष)

**उपधिः(कपट)**– उपधानम् यस विग्रहमा उप उपसर्ग पूर्वक धा धातुदेखि उक्त सूत्रले कि प्रत्यय भयो, धाका आकारको लोप भयो, 'उपधि'शब्द बन्यो, सु आयो, 'उपधिः' भयो। 'कपटोऽस्त्री व्याजदम्भोपधयश्छद्मकैतवे' (अमरकोष)

कि प्रत्यय गर्दा "अन्तःशब्दस्याङ्किविधिणत्वेषूपसर्गत्वं वाच्यम्" यो वार्तिकले अन्तर् शब्दलाई उपसर्ग संज्ञा हुने हुनाले अन्तर् शब्द पूर्वमा धा धातुदेखि कि प्रत्यय भएर 'अन्तर्धिः' शब्द बन्दछ, यस्तै प्रकारले उपाधि, व्याधि, समाधि, विधि, सन्धि, निधि, आदि शब्द कि प्रत्ययान्त बन्दछन्। सबै पुंलिङ्गमा रहन्छन्।

**स्त्रियामिति**– स्त्रीलिङ्गमा भावादि अर्थमा क्तिन् प्रत्यय होस्। यो घञ् प्रत्ययको अपवाद सूत्र हो।

**कृतिः(काम)**– करणम्, यस विग्रहमा कृ धातुदेखि स्त्रीलिङ्गमा भाव अर्थमा क्तिन् प्रत्यय भयो, ति कित् हुनाले गुण भएन, 'कृति' शब्द बन्यो, त्यसदेखि सु आयो, 'कृतिः' भयो।

**स्तुतिः(स्तोत्र)**– स्तवनम् यस अर्थमा स्तु धातुदेखि भावमा क्तिन् प्रत्यय भयो, 'स्तुति' शब्द बन्यो, सु आयो, 'स्तुतिः' भयो।

(**वा०**) **ॠल्वेति**– दीर्घ ॠकारान्त धातु र ल्वादि धातुदेखि पर रहेको क्तिन् प्रत्यय निष्ठाजस्तै होस् भन्नु। निष्ठावद्भाव भएको हुनाले तकार स्थानमा नकार हुन्छ।

**कीर्णिः(छर्ने काम)**– कॄ धातुदेखि "स्त्रियां क्तिन्"ले करणम् यस विग्रहमा क्तिन् प्रत्यय भयो, "ॠत इद्धातोः"ले ॠका स्थानमा इर् भयो, "हलि च"ले उपधादीर्घ भयो, 'कीर्+ति' भयो, "ॠल्वादिभ्य०"ले क्तिन् निष्ठा जस्तो भएपछि "रदाभ्यां०"ले तकारको नकार भयो, णत्व भयो, 'कीर्णि' शब्द बन्यो, त्यसदेखि सु आयो, 'कीर्णिः' भयो।

यस्तै प्रकारले लवनम् यस विग्रहमा- लूनिः (काट्नु) धवनम् यस विग्रहमा- धूनिः (काँप्नु) पवनम् यस विग्रहमा- पूनिः (पवित्र गर्नु) यी शब्द पनि सिद्ध हुन्छन्।

**संपदादिभ्यइति**– संपदादिगणमा पढिएका धातुदेखि भाव आदि अर्थमा क्विप् प्रत्यय होस्। संपद् विपद् आपद् प्रतिपद् परिषद् यो संपदादि गण हो।

**संपद्(ऐश्वर्य)**– संपद्यते अनया यस विग्रमा सम् उपसर्ग पूर्वक पद् धातुदेखि "संपदादिभ्यः"ले क्विप् प्रत्यय भयो, सर्वापहारी लोप भयो, 'संपद्' शब्द बन्यो, त्यसदेखि सु आयो, लोप भयो, जश्त्व चर्त्व भयो 'संपत्/संपद्' भयो।

यस्तै प्रकारले विपद्यते अनया यस अर्थमा विपद् शब्द, आपद्यते, अनया यस अर्थमा आपद् शब्द बन्यो, प्रतिपद्यते अनया यस अर्थमा प्रतिपद् शब्द परिषीदन्ति अस्यां यस अर्थमा परिषद् शब्द बन्दछ। सर्वत्र उक्त वार्तिकले क्विप् प्रत्यय हुन्छ। परिषद् शब्दमा "सदिरप्रतेः"ले षत्व हुन्छ।

**वा.**(क्तिन्नपीष्यते) । संपत्तिः । विपत्तिः । आपत्तिः ॥

**८६१. ऊतियूतिजूतिसातिहेतिकीर्तयश्च ३।३।९७॥**

एते निपात्यन्ते ॥

**८६२. ज्वरत्वरस्रिव्यविमवामुपधायाश्च ६।४।२०॥**

एषामुपधावकारयोरूठ् अनुनासिके क्वौ झलादौ च क्ङिति ॥ अतः क्विप् । जूः । तूः ।

---

**क्तिन्नपीति**– संपदादिगणपठित शब्ददेखि क्तिन् प्रत्यय पनि इष्ट छ । क्तिन् प्रत्यय भएमा दकारको चर्त्व भएर तकार हुन्छ । सपत्तिः । विपत्तिः । आपत्तिः यी शब्द बन्दछन् ।

**ऊतियूतीति**– ऊति, यूति, जूति, साति, हेति, कीर्ति यी शब्द क्तिन् प्रत्ययान्त निपातन गरिन्छन् ।

**ज्वरत्वेति**– ज्वर, त्वर, स्रिवु, अव, मव् धातुका उपधा र वकारका स्थानमा ऊठ् आदेश होस्, अनुनासिक पर भएमा, क्वि प्रत्यय पर भएमा र झलादि कित् ङित् प्रत्यय पर भएमा । ठकारको इत्संज्ञा, लोप हुन्छ ।

**ऊतिः (रक्षा)**– अवनम् यस अर्थमा "ऊतियूति०"ले क्तिन् प्रत्यय निपातन भयो, "ज्वरत्वर"ले उपधा र वकारका स्थानमा ऊठ् आदेश भयो, 'ऊति' शब्द बन्यो, त्यसदेखि सु आयो, 'ऊतिः' भयो ।

**यूतिः (सङ्गमस्थल)**– यवनम् वा युवन्ति अस्मिन् यस विग्रहमा भाव र अधिकरण अर्थमा क्तिन् प्रत्यय भयो, निपातनात् उकारको दीर्घ भयो, 'यूति' शब्द बन्यो, त्यसदेखि सु आयो, 'यूतिः' भयो । सङ्गमस्थल । 'गवाम्+यूतिः'- गव्यूतिः गाईको सङ्गमस्थल ।

**जूतिः (वेग)**– जवनम् यस विग्रहमा "ऊतियूति०"ले क्तिन् प्रत्यय भयो, निपातनाद् दीर्घ पनि 'जूति' शब्द बन्यो, त्यसदेखि सु आयो, 'जूतिः' भयो ।

**सातिः (अवसान, दान)**– सानम् यो विग्रहमा सो धातुदेखि र सननम् यस विग्रहमा सन् धातुदेखि पूर्वसूत्रले क्तिन्प्रत्यय भयो, सो धातुका ओकारका स्थानमा "आदेच०"ले आत्व भएपछि "द्यतिस्यति०"ले पाएको इत्त्व निपातनात् निषेध भयो र 'साति' शब्द बन्यो भने सन् धातुमा "जनसनखनां०"ले आत्व भयो, 'साति' शब्द बन्यो, त्यसदेखि सु आयो, 'सातिः' भयो ।

**षणु** दाने धातुबाट निष्पन्न 'साति' शब्दको दान अर्थ, **षो**ऽन्तकर्मणि धातुबाट निष्पन्न 'साति' शब्दको अवसान अर्थ हुन्छ । "सातिर्दानावसानयोः" अमरकोष ।

**हेतिः (हतियार)**– हन्ति अनेन हन् धातुदेखि उक्त सूत्रले क्तिन् प्रत्यय भयो, नकारको लोप, एत्व भयो, 'हेति' शब्द बन्यो, त्यसदेखि सु आयो, 'हेतिः' भयो ।

**कीर्तिः (यश / जस)**– ण्यन्त कीर्ति धातुदेखि युच् प्रत्ययलाई बाधेर क्तिन् र णिलोप भयो, सवर्ण लोप भयो, 'कीर्ति' शब्द बन्यो, त्यसदेखि सु आयो, 'कीर्तिः' भयो ।

"ज्वरत्वर०" यस सूत्रमा ज्वरआदि धातुदेखि क्विप् प्रत्यय पर भएमा ऊठ् आदेश होस् भनेको हुनाले ती धातुदेखि क्विप् प्रत्यय हुन्छ ।

**जूः (ज्वरो)**– ज्वरणंम् यस विग्रहमा ज्वर धातुदेखि भावमा क्विप् प्रत्यय भयो, सर्वापहारी लोप भयो, "ज्वरत्वर०"ले ऊठ् भयो, 'जूर्' शब्द बन्यो, त्यसदेखि सु आयो, लोप भयो, रेफको विसर्ग भयो, 'जूः' भयो । औ, जस्मा- जूरौ, जूरः हुन्छ ।

**तूः (शीघ्र कार्य)**– त्वर धातुदेखि क्विप्, ऊठ् भयो, 'तूर्' शब्द बन्यो, त्यसदेखि सु आयो, 'तूः' भयो । औ, जसमा- तूरौ, तूरः हुन्छ ।

सूः । ऊः । मूः ॥

**८६३. इच्छा ३।३।१०१॥**

इषेर्निपातोऽयम् ॥

**८६४. अ प्रत्ययात् ३।३।१०२॥**

प्रत्ययान्तेभ्यो धातुभ्यः स्त्रियामकारः प्रत्ययः स्यात् । चिकीर्षा । पुत्रकाम्या ॥

**८६५. गुरोश्च हलः ३।३।१०३॥**

गुरुमतो हलन्तात्स्त्रियामकारः प्रत्ययः स्यात् । ईहा ॥

**८६६. ण्यासश्रन्थो युच् ३।३।१०७॥**

अकारस्यापवादः ।

---

**सूः (सुरो)**– स्रिव् धातुदेखि पूर्ववत् क्विप्, ऊठ्, भयो 'स्रू' शब्द बन्यो, त्यसदेखि सु आयो, 'स्रूः' भयो ।

**ऊः (रक्षक)**– यस्तै प्रकारले अव् क्विप्, ऊठ्, भयो, 'ऊ' शब्द बन्यो, त्यसदेखि सु आयो, 'ऊः' भयो । औ, जस्मा- उवौ, उवः हुन्छ ।

**मूः (बन्धन)**– मव् धातुदेखि क्विप्, ऊठ्, भयो, 'मूः' शब्द बन्यो, त्यसदेखि सु आयो, 'मुवौ' औ जस्मा- मुवौ, मुवः हुन्छ ।

**इच्छेति**– इष् धातुदेखि भाव अर्थमा स्त्रीलिङ्गमा शप्रत्ययान्त इच्छा यो रूप निपातन गरिन्छ ।

**इच्छा**– इष् धातुदेखि एषणम् यस विग्रहमा भाव अर्थमा "इच्छा" यो सूत्रले श प्रत्यय निपातन भयो, शप् प्रत्यय भयो, षकारका स्थानमा छकार, पररूप, तुक्, चुत्व भयो, स्त्रीत्वात् टाप् दीर्घ भयो, इच्छा शब्द बन्यो, त्यसदेखि सु आयो, 'इच्छा' सिद्ध भयो । यो सूत्रले भावमा मात्र यो रूप निपातन हुन्छ अरू अर्थमा क्तिन् प्रत्यय नै हुन्छ र 'इष्टिः' यो रूप हुन्छ ।

**अेति**– प्रत्ययान्त धातुदेखि स्त्रीलिङ्गमा भावादि अर्थमा अकार प्रत्यय होस् । यो क्तिन् प्रत्ययको [१२३] अपवाद हो ।

**चिकीर्षा (गर्ने इच्छा)**– सन्नन्त चिकीर्ष धातुदेखि कर्तुमिच्छा यस विग्रहमा भाव अर्थमा क्तिन् प्रत्ययलाई बाधेर "अ प्रत्ययात्"ले अ प्रत्यय भयो, "अतो लोपः"ले अकारको लोप भयो, स्त्रीत्वाम् टाप् भयो, 'चिकीर्षा' शब्द बन्यो, त्यसदेखि सु आयो, लोप भयो, 'चिकीर्षा' भयो ।

**पुत्रकाम्या (पुत्रको इच्छा)**– पुत्रकाम्यनम् यस विग्रहमा पुत्रकाम्य धातुदेखि उक्त सूत्रले अ प्रत्यय भयो, 'पुत्रकाम्य+अ' यहाँ पुत्रकाम्यका अकारको लोप, टाप् प्रत्यय भयो, दीर्घ भयो, 'पुत्रकाम्या' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पुत्रकाम्या' भयो ।

**गुरोश्चेति**– गुरुमान् हलन्त धातुदेखि स्त्रीलिङ्गमा भावादि अर्थमा अकार प्रत्यय होस् । यो पनि क्तिन् प्रत्ययको अपवाद [१२४] हो ।

**ईहा (इच्छा)**– ईहनम् यो विग्रहमा ईह् धातुदेखि क्तिन् प्रत्ययलाई बाधेर "गुरोश्च हलः०"ले अ प्रत्यय भयो, टाप् भयो, 'ईहा' शब्द बन्यो, त्यसदेखि सु आयो 'ईहा' भयो । यस्तै प्रकारले ऊहा, श्लाधा, गर्हा, अर्घा, अर्चा, नन्दा आदि रूप सिद्ध हुन्छन् । गुरुमान् हलन्त धातुदेखि क्तिन् प्रत्यय हुँदैन ।

**ण्यास/श्रन्थेति**– ण्यन्त धातु, आस् धातु, श्रन्थ् धातुदेखि स्त्रीलिङ्गमा भावादि अर्थमा युच् प्रत्यय होस् । यो अकार प्रत्ययको अपवाद हो । अर्थात् ण्यन्त धातुमा "अ प्रत्ययात्"लाई र आस्

---

१२३ क्तिनोऽपवाद इति काशिका । १२४ माधवीयधातुवृत्ति अनुसार ।

कारणा । हारणा ॥

**८६७. नपुंसके भावे क्तः ३।३।११४॥**

**८६८. ल्युट् च ३।३।११५॥**

हसितम्, हसनम् ॥

**८६९. पुंसि संज्ञायां घः प्रायेण ३।३।११८॥**

**८७०. छादेर्घेऽद्व्युपसर्गस्य ६।४।९६॥**

द्विप्रभृत्युपसर्गहीनस्य छादेर्ह्रस्वो घे परे। दन्ताश्छाद्यन्तेऽनेनेति दन्तच्छदः। आकुर्वन्त्यस्मिन्नित्याकरः ॥

**८७१. अवे तृस्त्रोर्घञ् ३।३।१२०॥**

अवतारः कूपादेः ।

---

धातु र श्रन्थ् धातुमा "गुरोश्च हलः"लाई बाध्दछ ।

**कारणा**– कारणम् यस विग्रहमा कारि धातुदेखि "ण्यासश्रन्थो०"ले युच् प्रत्यय भयो, युका स्थानमा "युवोरनाकौ"ले अन् आदेश भयो, णिलोप, णत्व भयो, टाप् दीर्घ 'कारणा' शब्द बन्यो, त्यसदेखि सु आयो, 'कारणा' भयो ।

**हारणा**– हारणं यस विग्रहमा पूर्ववत् हारणा शब्द बन्यो, सु आयो, 'हारणा' भयो ।

**आसना**– आसनम् यस विग्रहमा 'आसना' हुन्छ । ('आसना स्थितिः') । अमरकोश

**श्रन्थना**– श्रन्थनम् यस विग्रहमा 'श्रन्थना हुन्छ ।

**नपुंसके इति**– नपुंसक लिङ्गमा भाव अर्थमा धातुदेखि क्त प्रत्यय होस् ।

**ल्युडिति**– नपुंसक लिङ्गमा भाव अर्थमा धातुदेखि ल्युट् प्रत्यय पनि होस् ।

**हसितम्/हसनम्**– हासः (हाँस्नु) यस विग्रहमा "नपुंसके भावे०"ले क्तप्रत्यय भयो, "ल्युट् च"ले ल्युट् पनि भयो, क्त प्रत्ययको इट् आगम भयो, 'हसित' शब्द बन्यो, त्यसदेखि सु आयो 'हसितम्' भयो । ल्युट्मा युको अन भयो, 'हसन' शब्द बन्यो, सु आयो, 'हसनम्' भयो । भावमा गरिएको क्त प्रत्ययान्त र ल्युट् प्रत्ययान्त शब्द नपुंसकलिङ्गी हुन्छन् ।

**पुंसि संज्ञायामिति**– पुलिङ्गमा संज्ञामा करण र अधिकरण अर्थमा धेरैजसो घप्रत्यय हुन्छ ।

**छादेर्घे इति**– दुई आदि उपसर्ग पूर्वमा नहुने छादि धातु (ण्यन्त छद्धातु) का आकारका स्थानमा ह्रस्वअकार होस्, घ प्रत्यय पर भएमा ।

**दन्तच्छदः (ओठ)**– दन्ताश्छाद्यन्तेऽनेन (दाँत ढाकिन्छन् यसले) यस विग्रहमा (ढाक्ने क्रियाको कर्म) दन्त आम् पूर्वमा हुने छादिधातुदेखि "पुंसि संज्ञायां०"ले घ प्रत्यय भयो, "छादेर्घे०"ले ह्रस्व भयो, णिलोप, समास, विभक्तिलुक्, छकारको, तुक्, जश्त्व, चुत्व, चर्त्व क्रमशः भयो, 'दन्तच्छद' शब्द बन्यो, त्यसदेखि सु आयो 'दन्तच्छदः' भयो । 'ओष्ठाधरौ रदनच्छदौ दशनवाससी' (अमरकोश ) अमरकोशमा दुवै ओठलाई लिंदा द्विवचन छ । यहाँ एक ओठलाई लिंदा एकवचन भयो, 'रदनच्छद' शब्दमा रदन शब्द र यहाँ दन्त शब्द समानार्थक छन् । 'रदना दशना दन्ताः' (अमरकोश)

**आकरः (खानी)**– आकुर्वन्ति अस्मिन् मिलेर काम गर्छन् यहाँ, यस विग्रहमा आङ् उपसर्ग पूर्वमा हुने कृधातुदेखि "पुंसि संज्ञायां०"ले अधिकरण अर्थमा घ प्रत्यय भयो, गुण भयो, आकर शब्द बन्यो, त्यसदेखि सु आयो 'आकरः' सिद्ध भयो । "खनिः स्त्रियामाकरः स्यात्" (अमरकोश)

**अवेरिति**–अव उपसर्गपूर्वक तॄ धातु र स्तॄ धातुदेखि घञ् प्रत्यय होस्, करण र अधिकरण अर्थमा ।

**अवतारः (सिंढी)**– अवतरन्ति अनेन (ओर्लन्छन् यसद्वारा) यस विग्रहमा अव उपसर्ग पूर्वमा

अवस्तारो जवनिका ॥

**८७२. हलश्च ३।३।१२१॥**

हलन्ताद् घञ् । घापवादः ।रमन्ते योगिनोऽस्मिन्नितिरामः । अपमृज्यतेऽनेन व्याध्यादिरित्यपामार्गः ॥

**८७३. ईषद्दुस्सुषु कृच्छ्राकृच्छ्रार्थेषु खल् ३।३।१२६॥**

करणाधिकरणायोरिति निवृत्तम् । एषु दुःखसुखार्थेषूपपदेषु खल् । तयोरेवेति भावे कर्मणि च । कृच्छ्रे–दुष्करः कटो भवता । अकृच्छ्रे-ईषत्करः । सुकरः ॥

---

हुने तॄ धातुदेखि "अवे तॄस्त्रोः०"ले घञ् प्रत्यय भयो, आर्वृद्धि भयो, अवतार शब्द बन्यो, त्यसदेखि सु आयो 'अवतारः' भयो ।

**अवस्तारः (पर्दा)**– अवस्तीर्यते अनेन (ढाकिन्छन् यसले) यस विग्रहमा अव उपसर्गपूर्वक स्तॄ धातुदेखि "अवे तॄस्त्रोः०"ले घञ् प्रत्यय, आर्वृद्धि भयो, 'अवस्तार' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अवस्तारः' भयो ।

**हलश्चेति**– हलन्त धातुदेखि घञ् प्रत्यय होस्[१२५] पुंलिङ्गमा, संज्ञामा, करण र अधिकरण अर्थमा । यो सूत्र "पुंसि संज्ञायां घः प्रायेण"को अपवाद हो ।

**रामः(राम, परशुराम र बलराम)**– रमन्ते योगिनोऽस्मिन् (रमाउँछन् योगिहरू यिनमा) यस विग्रहमा अधिकरण अर्थमा रम् धातुदेखि "हलश्च"ले घञ् प्रत्यय भयो, उपधावृद्धि भयो, 'राम' शब्द बन्यो, त्यसदेखि सु आयो, 'रामः' भयो ।

**अपामार्गः(वनौषधि विशेष)**– अपमृज्यते अनेन् व्याध्यादिः (हटाइन्छ यसले रोग आदि) यस विग्रहमा करण अर्थमा अप शब्दपूर्वमा हुने मृज् धातुदेखि "हलश्च"ले घञ् प्रत्यय भयो, "मृजेर्वृद्धिः"ले वृद्धि, कुत्व, भयो, 'अप+मार्ग', भयो, "उपसर्गस्य घञ्यमनुष्ये बहुलम्"ले अपका अकारका स्थानमा विकल्पले दीर्घ आकार भयो, 'अपामार्ग' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अपामार्गः' भयो । दीर्घ नभएको पक्षमा 'अपमार्ग' शब्द बन्दछ ।

**ईषदिति**– "करणाधिकरणयोः" यसको अधिकार निवृत्त भयो । "तयोरेव कृत्यक्तखलर्थाः"ले अब विधान गरिने प्रत्यय भाव र कर्ममा हुन्छन् । दुःख र सुख अर्थमा वर्तमान ईषद्, दुस्, सुशब्द उपपद भएमा धातुदेखि खल् प्रत्यय होस् । खकार र लकारको इत्संज्ञा हुन्छ । कृच्छ्र अर्थमा 'दुष्करः कटोभवता' यो उदाहरण र अकृच्छ्र अर्थमा 'सुकरः कटो भवता' यो उदाहरण हो ।

**दुष्करः(दुःखले गरिने)**– दुःखेन क्रियते (दुःखले बनाइन्छ) यस विग्रहमा दुस्उपसर्ग पूर्वक कृधातुदेखि कर्ममा "ईषद् दुःसुषु०"ले खल् प्रत्यय भयो, 'दुस्+कृ+अ', गुण, 'दुस्+कर' "कुगतिप्रादयः"ले समास भयो, 'दुस्+कर' यहाँ सकारको रुत्व विसर्ग भयो, विसर्गका स्थानमा "इदुदुपधस्य०"ले षकार भयो, 'दुष्कर' शब्द बन्यो, त्यसदेखि सु आयो, 'दुष्करः' भयो ।

'दुष्करः कटो भवता' (तपाइँद्वारा गुन्द्री बनाउन कठिन छ ।) यो उदाहरणमा कर्ममा प्रत्यय भएकोले कर्म, कटः प्रथमान्त भयो, सामानाधिकरण्यात् 'दुष्करः' यहाँ पनि प्रथमाविभक्ति भयो । त्यसको कर्ता भवत् अनुक्त हुनाले "कर्तृकरणयोस्तृतीया"ले तृतीयाविभक्ति भयो । "कर्तृकर्मणोः कृति"ले पाएको षष्ठीलाई "न लोकाव्ययनिष्ठाखलर्थतृनाम्"ले निषेध गऱ्यो ।

**ईषत्करः, सुकरः(सजिलै गर्न सकिने)**– सुखेन क्रियते यस विग्रहमा ईषत् र सु पूर्वमा हुने कृ धातुदेखि "ईषद् दुःसुषु०"ले कर्ममा खल् प्रत्यय, अर् गुण, समास आदि पूर्ववत् भयो, 'ईषत्कर',

---

१२५ माधवीयधातुवृत्ति अनुसार ।

**८७४. आतो युच् ३।३।१२८॥**

खलोऽपवादः । ईषत्पानः सोमो भवता । दुष्पानः । सुपानः ॥

**८७५. अलंखल्वोः प्रतिषेधयोः प्राचां क्त्वा ३।४।१८॥**

प्रतिषेधार्थयोरलंखल्वोरुपपदयोः क्त्वा स्यात् । प्राचां ग्रहणं पूजार्थम् । अमैवाव्ययेनेति नियमान्नोपपदसमासः । "दो दद् घोः" । अलं दत्त्वा । घुमास्थेतीत्त्वम् । पीत्वा खलु । अलंखल्वोः किम् ? मा कार्षीत् । प्रतिषेधयोः किम् ? अलङ्कारः ॥

---

'सुकर' यी दुई शब्द बने, ती दुवैदेखि सु आयो, 'ईषत्करः', 'सुकरः' भयो । ईषत्करः सुकरो वा कटो भवता (तपाईंद्वारा गुन्द्री बनाउनु सजिलो छ ।) यहाँ कर्ममा प्रथमा र कर्तामा तृतीया पूर्ववत् भयो ।

**आतो युजिति**– ईषत्, दुस्, सु शब्द उपपद हुने आकारान्त धातुदेखि कर्मअर्थमा युच् प्रत्यय होस् । यो युच् प्रत्यय खल् प्रत्ययको अपवाद हो । चकारको इत्संज्ञा हुन्छ । "ईषत्पानः सोमो भवता" (तपाईंद्वारा सोमपान गर्नु सजिलो छ) कर्ममा प्रत्यय भएको हुनाले कर्ता अनुक्त छ अतः कर्तामा भवता तृतीयान्त भयो ।

**ईषत्पानः**– सुखेन पीयते यस विग्रहमा ईषत् शब्द पूर्वमा हुने पा धातुदेखि कर्ममा "ईषद्दुःसुषु०"ले खल् प्रत्यय पायो, त्यसलाई बाधेर "आतो युच्"ले युच्प्रत्यय भयो, युका स्थानमा अन भयो, दीर्घ भयो, समास भयो, 'ईषत्पान' शब्द बन्यो, त्यसदेखि सु आयो, 'ईषत्पानः' भयो ।

**दुष्पानः**– दुखेन पीयते (दुःखले पिइन्छ) यस विग्रहमा दुस् शब्द उपपद हुने पा धातुदेखि खल्लाई बाधेर पूर्ववत् युच् प्रत्यय भयो, युका स्थानमा अन भयो, दीर्घ भयो । समास भयो, 'दुस्पान' भयो, दुस्का सकारको रुत्व, विसर्ग, "इदुदुपधस्य"ले षत्व भयो, 'दुष्पान' शब्द बन्यो, त्यसदेखि सु आयो 'दुष्पानः' भयो ।

**सुपानः**– 'सुपा+यु', 'सुपा+अन', दीर्घ, समास, 'सुपान' शब्द बन्यो, सु आयो, 'सुपानः' भयो ।

**अलंखल्वोरिति**– निषेधार्थक अलम् शब्द खलु शब्द उपपद भएमा धातुदेखि क्त्वा प्रत्यय होस् ।

**प्राचामिति**– 'प्राचां' ग्रहण गरेको सम्मानका निमित्त हो । ककारको इत्संज्ञा लोप हुन्छ । "अमैवाव्ययेन" यो नियम सूत्रले निषेध गरेकोले उपपद समास हुँदैन । दाधातुका स्थानमा "दो दद् घोः"ले दथ् आदेश हुन्छ ।

**अलं दत्त्वा (दिनु ठीक छैन)**– न देयम् (दिन योग्य छैन) यो विग्रहमा [126] अलम् शब्द उपपद हुने दा धातुदेखि "अलंखल्वोः प्रतिषेधयोः०"ले क्त्वा प्रत्यय भयो, 'दा+त्वा' यहाँ "आर्धधातुकस्येड्०"ले पाएको इट् निषेध भयो, "दो दद् घोः"ले दाका स्थानमा दथ् आदेश, चर्त्व भयो, 'दत्त्वा' शब्द भयो, दत्त्वा यसलाई "क्त्वातोसुन्कसुनः"ले अव्ययसंज्ञा भयो, सु आयो, लुक् भयो, 'दत्त्वा' भयो ।

यस्तै प्रकारले अम् आदि सबै विभक्ति लुक् हुन्छन् । सबै विभक्तिमा दत्त्वा यही रूप हुन्छ । यो कुरा अव्ययप्रकरणमा भनिएको छ ।

**पीत्वा खलु (पिउनु ठीक छैन)**– न पेयम् (पिउनु योग्य छैन) यस विग्रहमा खलु उपपद हुने पा धातुदेखि पूर्ववत् क्त्वाप्रत्यय भयो, इट् आगको निषेध भयो, पाका आकारको "घुमास्था०"ले ईत्व भयो, 'पीत्वा' शब्द बन्यो, त्यसलाई अव्ययसंज्ञा भएकोले सु आयो, लुक् भयो, 'पीत्वा' भयो ।

**अलंखल्वोः किमिति**– अलम् शब्द र खलु शब्द उपपद भएमा किन भन्नु ? नभन्ने हो भने निषेधार्थक 'मा'शब्द उपपद भएमा पनि क्त्वा प्रत्यय होला । अतः "अलंखल्वोः" भनियो र 'मा'शब्दको उपपद भएमा क्त्वा प्रत्यय भएन "माङि लुङ्"ले लुङ् भयो, 'मा कार्षीत्' भयो ।

**प्रतिषेधयोः किमिति**– निषेध अर्थमा रहेका किन भन्नु ? नभन्ने हो भने भूषण अर्थमा रहेको अलम् शब्द उपपद भएमा पनि क्त्वा होला, अतः 'प्रतिषेधयोः' भनियो । यसैले 'अलङ्कारः' यहाँ क्त्वा

---

१२६ "तत्रोपपदं सप्तमीस्थम्"ले अलम् खलु दुवै शब्दलाई उपपदसंज्ञा हुन्छ ।

**८७६. समानकर्तृकयोः पूर्वकाले ३।४।२१॥**

समानकर्तृकयोर्धात्वर्थयोः पूर्वकाले विद्यमानाद्धातोः क्त्वा स्यात् । भुक्त्वा व्रजति । द्वित्वमतन्त्रम् । भुक्त्वा पीत्वा व्रजति ॥

**८७७. न क्त्वा सेट् १।२।१८॥**

सेट् क्त्वा किन्न स्यात् । शयित्वा । सेट् किम् ? कृत्वा ॥

**८७८. रलो व्युपधाद्धलादेः संश्च १।२।२६॥**

इवर्णोवर्णोपधाद्धलादेःरलन्तात्परौ क्त्वासनौ सेटौ वा कितौ स्तः ।

---

भएन "भावे"ले अथवा "अकर्तरि च कारके"ले घञ् भयो, 'अलङ्कार' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अलङ्कारः' भयो । अलङ्कार शब्दको शृङ्गार गर्नु अथवा गहना भन्ने अर्थ बुझिन्छ ।

**समानेति**– दुवै धातुका क्रियाको कर्ता एउटै भएमा पूर्वकालमा विद्यमान धातुदेखि क्त्वा प्रत्यय होस् ।

**भुक्त्वा व्रजति**– (खाएर जान्छ) 'भोजनानन्तरं गमनं करोति' यस विग्रहमा भुज् धातुदेखि "समानकर्तृकयोः पूर्वकाले"ले क्त्वा प्रत्यय भयो, "चोःकुः"ले कुत्व, चर्त्व भयो, 'भुक्त्वा' शब्द बन्यो, त्यसदेखि सु आयो, लुक् भयो, 'भुक्त्वा' भयो । यहाँ केवल दुई क्रिया मात्र विवक्षित छैन । जस्तै-

**भुक्त्वा, पीत्वा, व्रजति**– (खाएर पिएर जान्छ) भोजनस्य पानस्य च अनन्तरं व्रजति यस विग्रहमा यी तीन धातुकै अर्थ समानकर्तृक छन् । पूर्वकालमा विद्यमान धातु अपेक्षया भुज्, पा, दुवै छन् र दुवैदेखि क्त्वा हुँदा भुक्त्वा, पीत्वा भयो ।

'भुक्त्वा व्रजति' यहाँ जानु क्रिया भन्दा पहिले खानु क्रिया छ र खाने र जाने कर्ता एउटै छ । जानुभन्दा पहिले खानु क्रिया छ । 'भुक्त्वा, पीत्वा, व्रजति' यहाँ जानु क्रिया भन्दा पहिले खानु र पिउनु क्रिया छन् र खाने पिउने र जाने कर्ता यौटै हो । जानु क्रिया भन्दा अगाडि पिउनु क्रिया छ, त्यसभन्दा अगाडि खानु क्रिया छ, दुवै पूर्वकालिक क्रिया छन् र दुवै देखि क्त्वा प्रत्यय भयो ।

क्त्वा प्रत्यय हुने स्थलमा क्रियाको कर्ता उही हुन्छ, काल फरक हुन्छ । पूर्वकालिक क्रियाबोधक धातुदेखि क्त्वा हुन्छ । सबभन्दा उत्तरकालिक क्रियाबोधक धातुदेखि लट् आदि लकार हुन्छन् । वा भाववाचक कृत् प्रत्यय ल्युट् आदि प्रत्ययानन्तर क्रियापद रहेको वाक्य पनि हुन सक्छ । जस्तै– भुक्त्वा पीत्वा गमनम् भविष्यति ।

**न क्त्वेति**– इट् आगमले सहित भएको क्त्वा प्रत्यय कित् नहोस् ।

**शयित्वा**– शयनं कृत्वा वा शयनस्य अनन्तरम् यस विग्रहमा उत्तरकालिक क्रियाको विवक्षा छ, अतः शी धातुदेखि "समानकर्तृकयोः०"ले क्त्वा प्रत्यय भयो, 'शी+त्वा' भयो, शी धातु सेट् हुनाले "आर्धधातुकस्येड्०"ले इट् आगम भयो, 'शी+इत्वा' भयो, "यदागमस्तद्गुणीभूतस्तद्ग्रहणेन गृह्यते" यो न्याय लाएर इट् आगम सहित क्त्वा प्रत्यय (इत्वा) सबै कित् भएको थियो, "न क्त्वा सेट्"ले कित्व निषेध भयो, कित् नभएको हुनाले गुणनिषेध भएन, गुण, अय्आदेश भयो, 'शयित्वा' शब्द बन्यो, त्यसदेखि सु आयो, लुक् भयो, 'शयित्वा' भयो । यसमा उत्तरकालिक क्रिया राख्नु पर्छ । जस्तै शयित्वा भुङ्क्ते (सुतेर खान्छ) शयित्वा पठति (सुतेर पढ्छ ।) यस्तै अन्यत्र पनि जान्नू ।

**सेट् किमिति**– "न क्त्वा सेट्" यस सूत्रमा सेट् किन भन्नु ? नभन्ने हो भने इट् आगम नभएको क्त्वाको पनि कित्त्वनिषेध होला र कृत्वा यहाँ गुण होला । सो नहोस् भनेर हामीले सेट् भन्यौं, कृत्वा यहाँ सेट् क्त्वा छैन र कित्त्वको निषेध भएन, कित् नै भयो, अतः "क्ङिति च"ले गुणनिषेध भयो, 'कृत्वा' भयो ।

**रल इति**– इवर्ण र अवर्ण उपधामा हुने हलादि रलन्त धातुदेखि पर रहेको सेट् क्त्वा र सन् विकल्पले कित् होउन् । रल् यो प्रत्याहार हो, यसमा यकार वकारबाहेक सबै व्यञ्जन पर्दछन् ।

---

द्युतित्वा, द्योतित्वा । लिखित्वा, लेखित्वा । व्युपधात्किम् ? वर्तित्वा ।रलः किम् ? सेवित्वा । हलादेः किम् ? एषित्वा । सेट् किम् ? भुक्त्वा ॥

**८७९. उदितो वा ७।२।५६॥**

उदितः परस्य क्त्व इड्वा । शमित्वा, शान्त्वा ।

---

**द्युतित्वा/द्योतित्वा**– द्युत् धातुदेखि "समानकर्तृकयोः०"ले क्त्वा प्रत्यय भयो, "आर्धधातुकस्येड्वलादेः"ले इट् आगम भयो, 'द्युत्+इत्वा' यहाँ "न क्त्वा सेट्"ले किन्त्वनिषेध पाएकोमा बाधेर "रलो व्युपधाद्धलादेः०"ले हलादि, रलन्त, इकार, उकार उपधामा हुने धातुदेखि पर रहेको सेट् क्त्वा र सन् विकल्पले कित् होस् भनेकोले यो हलादि, रलन्त, उकार उपधामा हुने धातु छ र त्यसदेखि पर रहेको सेट् क्त्वाको वैकल्पिक कित्त्व भयो, कित्त्व भएको पक्षमा गुणनिषेध भयो, 'द्युतित्वा' भयो । कित्त्व भएका पक्षमा गुण भयो, 'द्योतित्वा' भयो ।

**लिखित्वा/लेखित्वा**– पूर्ववत् लिख् धातुदेखि क्त्वा भयो, इट् आगम भयो, 'लिख्+इत्वा' यहाँ पनि "न क्त्वा सेट्"ले नित्य कित्त्व निषेध पाएकोमा बाधेर यो पनि हलादि, रलन्त, इकार उपधामा हुने धातु छ "रलो व्युपधात्०"ले सेट् क्त्वाको वैकल्पिक कित्त्व भयो, कित्त्व पक्षमा गुण भएन, 'लिखित्वा' भयो । कित्त्व भएका पक्षमा गुण भयो, 'लेखित्वा' भयो ।

**व्युपधात् किमिति**– इकार उकार उपधामा हुने धातु किन भन्नु ? नभन्ने हो 'वृत्+इत्वा' यहाँ ऋकार उपधामा हुने धातुदेखि पर रहेका सेट् क्त्वाको वैकल्पिक कित्त्व होला र गुणनिषेध होला सो नहोस् भनेर हामी व्यूपधात्- अर्थात् इकार उकार उपधामा हुने धातु भन्यौ, यहाँ वृत्धातु इकार उकार उपधामा हुने छैन, ऋकार उपधामा हुने छ र यसले वैकल्पिक कित्त्व भएन "न क्त्वा सेट्०"ले नित्य कित्त्वनिषेध भयो र गुण भयो, 'वर्तित्वा' भयो ।

**रलःकिमिति**– रलन्त धातु किन भन्नु ? नभन्ने हो भने सिव् धातुदेखि क्त्वा प्रत्यय भयो, 'सिव्+इत्वा' यहाँ हलादि, इकार उपधामा हुने धातु हुनाले सेट् क्त्वाको कित्त्व विकल्पले होला र वैकल्पिक गुणनिषेध होला, सो नहोस् भनेर रलन्त धातु भन्यौ, यो रलन्त धातु छैन र यो सूत्र लागेन, "न क्त्वा सेट्"ले सेट् क्त्वा नित्य अकित् भयो र गुण भयो, 'सेवित्वा' भयो ।

**हलादे किमिति**– "रलोव्युपधात्०" यो सूत्रमा हलादेः किन भन्नु ? नभन्ने हो भने इष् धातुदेखि क्त्वा प्रत्यय भयो, इट् आगम भयो, इष् धातु रलन्त, इकार, उपधामा हुने धातु छ र यहाँ पनि यो सूत्र लाग्ला र क्त्वाको वैकल्पिक कित्त्व होला । सो नहोस् भनेर "हलादेः" भन्यौ 'हलादेः' भनेपछि हल् आदिमा हुने धातु भन्ने अर्थ भयो, यहाँ हलादि धातु छैन र यो सूत्र लागेन "न क्त्वा सेट्"ले नित्य कित्त्व निषेध भयो र गुण भयो, 'एषित्वा' भयो ।

**सेट् किमिति**– सेट् क्त्वा किन भन्नु ? नभन्ने हो । भुज् धातुदेखि क्त्वा भयो, इट् आगमको निषेध भयो, 'भुज्+त्वा' यहाँ हलादि, रलन्त, उकार उपधामा हुने धातु छ र वैकल्पिक कित्त्व होला र एकपक्षे गुण भएर 'भोक्त्वा' यो अनिष्ट रूप सिद्ध होला । सो नहोस् भनेर हामीले सेट् भन्यौ । यहाँ सेट् क्त्वा छैन र यो सूत्र लागेन । कित् हुनाले गुणनिषेध भयो, जश्त्व, चर्त्व भयो, 'भुक्त्वा' भयो ।

**उदित इति**– ह्रस्व उकारको इत्संज्ञा हुने धातुदेखि पर रहेको क्त्वा प्रत्ययको विकल्पले इट् आगम होस् ।

**शमित्वा/शान्त्वा**– शम्(शमु)धातुदेखि "समानकर्तृकयोः०"ले क्त्वा प्रत्यय भयो, 'शम्+त्वा' भयो, "आर्धधातुकस्येड्०"ले पाएको इट् आगम निषेध भएपछि, "उदितो वा"ले यो उकारको इत्संज्ञा

---

देवित्वा द्यूत्वा । "दधातेर्हिः" । हित्वा ॥

**८८०. जहातेश्च क्त्वि ७।४।४३॥**

हित्वा । हाङस्तु–हात्वा ॥

**८८१. समासेऽनञ्पूर्वे क्त्वो ल्यप् ७।१।३७॥**

अव्ययपूर्वपदेऽनञ्समासे क्त्वो ल्यबादेशः स्यात् । तुक् । प्रकृत्य । अनञ् किम् ? अकृत्वा ॥

**८८२. आभीक्ष्ण्ये णमुल् च ३।४।२२॥**

आभीक्ष्ण्ये द्योत्ये पूर्वविषये णमुल् स्यात् क्त्वा च ॥

**८८३. नित्यवीप्सयोः ८।१।४॥**

आभीक्ष्ण्ये वीप्सायां च द्योत्ये पदस्य द्वित्वं स्यात् । आभीक्ष्ण्यं तिङन्तेष्वव्ययसंज्ञकेषु

---

हुने धातु हुनाले क्त्वाको विकल्पले इट् आगम भयो, 'शमित्वा' भयो, । इट् आगम नभएका पक्षमा "अनुनासिकस्य क्विझलोः०"ले दीर्घ भयो । नकारको अनुस्वार, परसवर्ण भयो, 'शान्त्वा' भयो ।

**देवित्वा/द्यूत्वा–** दिव् धातुदेखि "समानकर्तृकयोः पूर्वकाले"ले क्त्वा प्रत्यय भयो, "उदितो वा"ले विकल्पले इट् आगम भयो, "न क्त्वा सेट्"ले कित्त्व निषेध भएकोले गुण भयो, 'देवित्वा' भयो । इट् आगम नभएको पक्षमा "च्छ्वोः शूडनुनासिके च"ले ऊठ् आदेश, यण् भयो, 'द्यूत्वा' भयो ।

**हित्वा–** धा धातुदेखि पूर्वसूत्रले क्त्वा प्रत्यय भयो, "दधार्तेहिः"ले धाका स्थानमा हि आदेश भयो, 'हित्वा' भयो ।

**जहातेश्चेति–**जहाति रूप हुने हा धातुका स्थानमा हिआदेश होस्, क्त्वा प्रत्यय पर भएमा । **हित्वा–** हा (ओहाक् त्यागे)धातुदेखि क्त्वा प्रत्यय भयो, "जहातेश्च क्त्वि"ले हिआदेश भयो, 'हित्वा' भयो ।

**हाङस्त्विति–** ओहाङ् धातुदेखि क्त्वा प्रत्यय भएमा त 'हात्वा' यस्तो रूप हुन्छ । अर्थात् हा धातुका स्थानमा हिआदेश हुँदैन । माथि सिद्ध गरिएका क्त्वा प्रत्ययान्त शब्ददेखि आएको सुप्को लुक् हुन्छ ।

**समास इति–** नञ् समासदेखि भिन्न अव्यय पूर्वपदमा हुने समास भएमा क्त्वाका स्थानमा ल्यप् आदेश होस् ।

**तुगिति–** ल्यप् गरेपछि "ह्रस्वस्य पितिकृति०"ले तुक् आगम हुन्छ ।

**प्रकृत्य–** प्र उपसर्गपूर्वमा हुने कृ धातुदेखि क्त्वा प्रत्यय भयो, "कुगतिप्रादयः"ले समास भयो, "समासेऽनञ्पूर्वे"ले क्त्वाका स्थानमा ल्यप् भयो, 'प्रकृ+य' भयो, "ह्रस्वस्य पिति०"ले कृ धातुको तुक् आगम भयो, स्थानिवत्त्वात् क्त्वा प्रत्ययान्त भएकोले सुप्को लुक् भयो, 'प्रकृत्य' सिद्ध भयो ।

**अनञः किमिति–** "समासेऽनञ्पूर्वे०" यस सूत्रमा अनञ् किन भन्नु नभन्ने हो भने नञ् समास भएको ठाउँमा 'अकृत्वा' यहाँ पनि ल्यप् होला, सो नहोस् भनेर 'अनञ्' भनियो, अनञ् भनेको हुनाले यहाँ ल्यप् आदेश भएन 'अकृत्वा' यस्तै रह्यो ।

**आभीक्ष्ण्ये इति–** क्रियाको आभीक्ष्ण्य(बारम्बार) अर्थ बुझिएमा समानकर्तृक धात्वर्थमध्ये पूर्वकालमा रहेको क्रियालाई कहने धातुदेखि णमुल् प्रत्यय होस्, क्त्वा प्रत्यय पनि होस् ।

**नित्येति–** [१२७]आभीक्ष्ण्य र [१२८]वीप्सा अर्थ बुझिँदामा पदको द्वित्व होस् ।

**आभीक्ष्ण्यमिति–** आभीक्ष्ण्य (बारम्बार) अर्थ तिङन्त र अव्ययसंज्ञक कृदन्तमा पनि हुन्छ । त्यो क्रियानिष्ठ धर्म हो । वीप्सा भनेको व्याप्तिको इच्छा हो । त्यो प्रयोक्ताको धर्म हो । यसका उदाहरण 'वृक्षं वृक्षं प्रति', 'ग्रामो ग्रामो रमणीयः' आदि हुन् ।

---

१२७ यहाँ 'आभीक्ष्ण्य' भनेको निरन्तरता हैनकि 'पौनः पुन्य' हो । १२८ वीप्सा भनेको 'प्रत्येक' भन्ने अर्थ हो ।

कृदन्तेषु च । स्मारं स्मारं नमति शिवम् । स्मृत्वा स्मृत्वा । पायम्पायम् । भोजम्भोजम् । श्रावं श्रावम् ॥

**८८४. अन्यथैवंकथमित्थंसु सिद्धाप्रयोगश्चेत् ३।४।२७॥**

एषु कृञो णमुल् स्यात् । सिद्धोऽप्रयोगोऽस्य एवम्भूतश्चेत् कृञ् । व्यर्थत्वात्प्रयोगानर्ह इत्यर्थः । अन्यथाकारम् । एवङ्कारम् । कथङ्कारम् । इत्थङ्कारं भुङ्क्ते । सिद्धेति किम् ? शिरोऽन्यथा कृत्वा भुङ्क्ते ॥

**इत्युत्तरकृदन्तप्रकरणम् ॥**

**॥ इति कृदन्तप्रकरणम् ॥**

---

**स्मारं स्मारं नमति शिवम्** (सम्झँदै सम्झँदै शिवलाई ढोग दिन्छ ।) यहाँ स्मृ धातुदेखि आभीक्ष्ण्य अर्थमा समानकर्तृक धात्वर्थमध्ये पूर्वकालिक क्रियामा रहेका स्मृ धातुदेखि णमुल् प्रत्यय भयो, णकार र उल्को अनुबन्ध लोप भयो, 'स्मृ+अम्'यहाँ वृद्धि भयो, 'स्मारम्' भयो, मान्त कृदन्त हुनाले अव्ययत्वात् सु आयो, लुक् भयो, "नित्यवीप्सयोः"ले द्वित्व भयो, 'स्मारं स्मारं' नमति शिवम् भयो ।

**स्मृत्वा स्मृत्वा**– एकपक्षमा क्त्वा प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भयो, 'स्मृत्वा स्मृत्वा' नमति शिवम् भयो ।

**पायम्पायम् (पिउँदै पिउँदै)**– यहाँ पा धातुदेखि आभीक्ष्ण्य अर्थमा णमुल् भयो, "आतो युक्"ले युक् आगम "नित्यवीप्सयोः"ले द्वित्व भयो र 'पायम्पायम्' सिद्ध भयो ।

**भोजं भोजम् (खाँदै खाँदै)** यहाँ भुज् धातुदेखि णमुल्, उपधागुण, "नित्यवीप्सयोः"ले द्वित्व भयो, 'भोजं भोजम्' भयो । यहाँ णमुल् नभएमा क्त्वा पनि हुन्छ ।

**श्रावम् श्रावम्**– श्रु धातु आभीक्ष्ण्य अर्थमा णमुल्, "अचोञ्णिति"ले वृद्धि, आव् आदेश, द्वित्व भयो, 'श्रावम् श्रावम्' सिद्ध भयो । उदाहरण- पायम्पायम् भुङ्क्ते (पिउँदै पिउँदै खान्छ), भोजं भोजम् हसति (खाँदै खाँदै हाँस्छ) "श्रावं श्रावं नयनसलिलं मुञ्चति श्रीशगाथाः" (भगवान्का गाथाहरू गाउँदै आँशु बहाउँछ ।) आदि जान्नू । यहाँ पनि णमुल् नभएमा क्त्वा पनि हुन्छ ।

**अन्यथैवमिति**– अन्यथा, एवम्, कथम्, इत्थम्, यी शब्द उपपद भएमा कृ धातुदेखि णमुल् प्रत्यय होस्, सिद्ध छ अप्रयोग जसको, यस्तो कृञ् धातु छ भने ।

**व्यर्थत्वादिति**– व्यर्थ हुनाले प्रयोग गर्न अयोग्य अर्थात् प्रयोग नगर्दा पनि हुने भन्ने अर्थ हो ।

**अन्यथाकारम्, एवंकारम्, इत्थंकारं भुङ्क्ते**- (अर्कै प्रकारले, यस्तो प्रकारले खान्छ) यहाँ अन्यथा शब्द, एवं शब्द, इत्थं शब्द पूर्वमा हुने कृ धातु सिद्धाप्रयोग छ (कृ धातुको प्रयोग व्यर्थ छ) कृ धातुको प्रयोग गर्दा पनि नगर्दा पनि उही अर्थ हुन्छ जस्तै- अन्यथाकारं भन्नु र अन्यथा भन्नु एउटै कुरा हो । त्यस्तै एवम् भन्नु र एवम्कारंभन्नुको अर्थ उही हो । कथं भन्नु र कथंकारं भन्नुमा पनि केही फरक छैन । अतः यी तीनै ठाउँमा कृ धातु सिद्धाप्रयोग (निष्प्रयोजन) छ र "अन्यथैवं०" यो सूत्रले 'कृ धातुदेखि णमुल्, आर्वृद्धि भयो, 'अन्यथाकारम्' 'एवंकारम्', 'इत्थंकारम्' यी रूप सिद्ध भए ।

**सिद्धेति किम्**- सिद्धाप्रयोग किन भन्नु ? नभन्ने हो भने शिरोऽन्यथा कृत्वा भुङ्क्ते (शिर आर्कै बनाएर खान्छ) यहाँ कृ धातुको प्रयोग गर्दा 'शिर अर्कै गराएर खान्छ' भन्ने अर्थ हुन्छ, कृ धातुको प्रयोग नगर्दा 'अर्कै प्रकारले शिर खान्छ' भन्ने अर्थ हुन्छ । यहाँ कृ धातु सिद्धाप्रयोग नभए पनि णमुल् भएर "शिरोऽन्याथाकारं भुङ्क्ते" यस्तो अनिष्ट रूप सिद्ध होला । सो नहोस् भनेर "सिद्धाप्रयोगश्चेत्" भनेर सूत्रमा पढिएको हो, अतः यहाँ णमुल् भएन क्त्वा प्रत्यय भयो, 'शिरोऽन्यथा कृत्वा भुङ्क्ते' भयो ।

**उत्तरकृदन्त सकियो ।**

**कृदन्तप्रकरण सकियो ।**

## अथ विभक्त्यर्थप्रकरणम्

**८८५. प्रातिपदिकार्थलिङ्गपरिमाणवचनमात्रे प्रथमा २।३।४६॥**

नियतोपस्थितिकः प्रातिपदिकार्थः। मात्रशब्दस्य प्रत्येकं योगः। प्रातिपदिकार्थमात्रे

---

**अब विभक्त्यर्थ प्रकरण शुरू हुन्छ ।**

विभक्त्यर्थ भनेको विभक्तिको अर्थ हो। यहाँ तिङ्विभक्ति हैन कि सुप् विभक्तिको अर्थ गरिन्छ। विभक्ति प्रथमा, द्वितीया आदि सात छन् भन्ने कुरा र विभक्ति ल्याएपछि शब्दहरूसँग विभक्तिसंयोजनप्रक्रिया, साधनिका सुबन्त प्रकरणमा बताइएकै छ। यहाँ कुन कुन अर्थमा अथवा कुन कुन पदको योगमा कुन कुन विभक्ति हुन्छन्, त्यसको निरूपण गरिन्छ। कर्ता आदि कारक र सम्बन्ध विभक्तिका अर्थ छन्, कारक अर्थमा आउने कारकविभक्ति हुन्। कारकदेखि भिन्न कुनै पदको योगमा आउने विभक्ति उपपदविभक्ति हुन्। अब क्रमशः प्रथमा आदि विभक्तिका अर्थ बताइन्छ।

**प्रातिपदिकेति–** "स्वार्थद्रव्यलिङ्गसंख्याकारकपञ्चकं प्रातिपादिकार्थः" यो सिद्धान्त अनुसार स्वार्थ (जाति) द्रव्य (व्यक्ति) लिङ्ग, सङ्ख्या, कारक। यी पाँच प्रातिपदिकार्थ हुन् तर त्यसमा विभिन्न पक्ष छन् भन्ने वैयाकरणभूषणसार[१२९] को भनाइ अनुसार यहाँ स्वार्थ र द्रव्य (जाति र व्यक्ति) लाई प्रातिपदिकार्थ मानिएको छ।

**नियतेति–** यसैकारणले भनिएको छ निपतोपस्थितिक प्रातिपदिकार्थ हो। अर्थात् जुन प्रातिपदिक (नाम-शब्द)को उच्चारण गर्दा जसका अर्थको नियमले नै उपस्थिति हुन्छ, त्यो प्रातिपदिकार्थ हो। उपर्युक्त पाँचवटैलाई प्रातिपदिकार्थभित्र ग्रहण गर्दा सूत्रमा लिङ्ग र वचन ग्रहण गर्नु व्यर्थ हुन्छ। कारकत्व पनि सबै प्रातिपदिकमा रहँदैन। अतः जाति र व्यक्ति नै प्रातिपदिकार्थ हुन् भन्ने आशय वृत्तिकारको छ।

**मात्रेति–** मात्र शब्दको "द्वन्द्वान्ते श्रूयमाणं पदं प्रत्येकमभिसंबध्यते" यो नियम अनुसार प्रत्येक पदसँग सम्बन्ध रहन्छ। अतः सूत्रको अर्थ हुन्छ-

**प्रातिपदिकेति–** प्रातिपदिकार्थमात्र बुझिएमा, लिङ्ग मात्र अधिक बुझिएमा, परिमाण मात्रमा, सङ्ख्या मात्रमा पनि प्रातिपदिकदेखि प्रथमाविभक्ति होस्।

"प्रातिपदिकार्थलिङ्गपरिमाणवचनमात्रे प्रथमा", कर्मणि द्वितीया आदि सूत्र "ङ्याप्प्रातिपदिकात्" यस सूत्रका नियामक हुन्। अतः ङ्यन्त, आबन्त र प्रातिपदिकदेखि भन्ने अर्थ यहाँ स्वतः बुझ्नु पर्छ। ङयाब्ग्रहणको विशेष फल हुनाले प्रातिपदिकभित्र नै सबै शब्द पर्दछन्। अतः प्रातिपदिकदेखि मात्र भनेमा केही फरक पर्दैन।

लिङ्ग नभएका अव्यय शब्द र नियतलिङ्ग शब्द प्रातिपदिकार्थ मात्रका उदाहरण हुन् जस्तैः-

**उच्चैः, नीचैः–** उच्चैस्, नीचैस् शब्ददेखि प्रातिपदिकार्थमात्र बुझिँदामा "प्रातिपदिकार्थलिङ्गपरिमाण०"ले प्रथमाविभक्ति पाएमा एकत्वसंख्याविशिष्ट रूप अर्थ बुझिँदामा प्रथमाको

---

१२९ एकं द्विकं त्रिकं चाथ चतुष्कं पञ्चकं तथा । नामार्थ इति सर्वेऽमी पक्षाः शास्त्रे निरूपिताः॥ इति वैयाकरण भूषणसारे नामार्थनिर्णये।

## लघुसिद्धान्तकौमुद्याम्

लिङ्गमात्राद्याधिक्ये परिमाणमात्रे संख्यामात्रे च प्रथमा स्यात्। प्रातिपदिकार्थमात्रे–उच्चैः। नीचैः। कृष्णः। श्रीः। ज्ञानम्। लिङ्गमात्रे–तटः, तटी, तटम्। परिमाणमात्रे–द्रोणो व्रीहिः। वचनं संख्या। एकः, द्वौ, बहवः॥

---

एकवचन सु आयो, "अव्ययादाप्सुपः"ले लुक् भयो, सकारको रुत्व, विसर्ग भयो, 'उच्चैः, नीचैः' भयो। उच्चैर्गृहम्। उच्चर्गृहे। उच्चैर्गृहाणि।

यहाँ प्रातिपदिकार्थमात्रमा उच्चैस् शब्द र गृह शब्दबाट सु, औ, जस् आउँछन्, उच्चैस् शब्ददेखि पर रहेको विभक्तिको "अव्ययादाप्सुपः"ले लुक् हुन्छ। गृह शब्ददेखि पर रहेका सु, औ, जस्, सँग विभक्तिकार्य हुन्छ र रूप सिद्ध हुन्छन्।

**कृष्णः**– (श्रीकृष्ण) कृष्ण शब्ददेखि प्रातिपदिकार्थमात्रमा "प्रातिपदिकार्थलिङ्गपरिमाण०" यो सूत्र लाएर प्रथमा विभक्तिको एकवचन सु आयो, विभक्ति कार्य भयो, 'कृष्णः' सिद्ध भयो।

**श्रीः**– श्री शब्ददेखि प्रातिपदिकार्थमात्रमा उक्त सूत्रले प्रथमा विभक्तिको एकवचन सु आयो, विभक्तिकार्य भयो, 'श्रीः' सिद्ध भयो।

**ज्ञानम्**– प्रातिपदिकार्थमात्र बुझिँदामा उक्त सूत्रले ज्ञान शब्ददेखि प्रथमाको एकवचन सु आयो, नपुंसकलिङ्ग हुनाले सुका स्थानमा अम्, पूर्वरूप भयो, 'ज्ञानम्' सिद्ध भयो।

कृष्णशब्द नित्य पुंलिङ्ग, श्री शब्द नित्यस्त्रीलिङ्ग र ज्ञान शब्द नित्य नपुंसक लिङ्ग हुनाले यी नियतलिङ्ग शब्दका उदाहरण भए।

**लिङ्गमात्राधिक्य इति**– जो अनियतलिङ्ग दुई लिङ्ग या तीनै लिङ्गमा रहन्छन् ती शब्ददेखि लिङ्गमात्रको आधिक्य अर्थ बुझिँदामा यसै सूत्रले प्रथमा विभक्ति आउँछ 'लिङ्गमात्रे' यत्ति नभनेर आधिक्य शब्द थपेको कारण प्रातिपदिकार्थ अर्थात्- स्वार्थ द्रव्यबाहेक लिङ्गमात्रको आधिक्य बुझिए पनि प्रथमा होस् त्यस भन्दा अरू कर्मादि नबुझियोस् भन्ने आशय हो। लिङ्ग मात्र अधिक भएका शब्दको उदाहरण। जस्तैः–

**तटः, तटी, तटम्**– यहाँ स्वार्थ द्रव्य (जाति व्यक्ति) बाहेक पुलिङ्ग, स्त्रीलिङ्ग, नपुंसकलिङ्ग अधिक बुझिन्छ र उक्त सूत्रले लिङ्गमात्राधिक्यमा प्रथमा विभक्ति आयो र उक्त रूप सिद्ध भए।

**परिमाणमात्र इति**– परिमाण मात्रको उदाहरण 'द्रोणो व्रीहिः' यो हो। यहाँ द्रोण शब्ददेखि परिमाण मात्रमा प्रथमा विभक्ति नगरेर प्रातिपदिकार्थमात्रमा गर्ने हो भने परिच्छेद्यपरिच्छेदकभाव बुझिँदैन र "समानविभक्त्यन्तैकनामार्थस्यापरनामार्थे भेदेनाऽन्वयोऽव्युत्पन्नः" (समानविभक्त्यन्त यौटा प्रातिपदिकार्थको अर्को प्रातिपदिकार्थका साथ भेदसम्बन्धले अन्वय गर्नु व्युत्पन्न (न्याय्य) हुँदैन) भनेकोले अभेदसम्बन्धले अन्वय गर्दा 'द्रोणाभिन्नो व्रीहिः', (जो द्रोण त्यसदेखि अभिन्न व्रीहि) यो अर्थ होला, तर यो कुरा मिल्दैन। अतः प्रातिपदिकार्थमात्रमा प्रथमा नगरेर परिमाणमात्रमा प्रथमा गर्नु परेको हो। परिमाण मात्रमा प्रथमाविभक्ति गरेपछि विभक्तिको अर्थ भयो- सामान्य परिमाण। प्रकृति अर्थात् द्रोणको अर्थ भयो- विशेष परिमाण। अतः द्रोणरूप परिमाण भन्ने अर्थ आयो। व्रीहि शब्ददेखि प्रातिपदिकार्थमात्रमा प्रथमा आयो र अन्वय गर्दा 'द्रोणरूपं यत्परिमाणं तत्परिच्छन्नो व्रीहिः' (द्रोणरूप जो परिमाण त्यसमा नापिएको धान) भन्ने अर्थ भयो र आकाङ्क्षित अभिप्राय सिद्ध भयो।

**वचनमिति**– यहाँ 'उक्तार्थानामप्रयोगः' (उक्त अर्थको प्रयोग हुँदैन।) यो परिभाषा लगाएर एक, द्वि, बहु शब्दको एक दुई धेरै भन्ने अर्थ नै प्रातिपदिकार्थ छ त्यो उक्त भैसकेको अर्थको पुनः प्रयोग हुँदैन भनेकोले प्रातिपादिकार्थमात्रमा प्रथमा पाउँदैन। अतः वचन ग्रहण गर्नु पर्‍यो। वचन भनेको संख्या हो, संख्या मात्रको उदाहरण- एकः। द्वौ। बहवः यी हुन्। यहाँ एकत्व संख्या

---

**८८६. सम्बोधने च २।३।४७॥**
प्रथमा स्यात् । हे राम ॥

**इति प्रथमा ।**

**८८७. कर्तुरीप्सिततमं कर्म १।४।४९॥**
कर्तुः क्रियया आप्तुमिष्टतमं कारकं कर्मसंज्ञं स्यात् ।

---

बुझिँदामा एक शब्ददेखि उक्त सूत्रले प्रथमाको एकवचन सु आयो । द्वित्वसंख्या बुझिँदामा द्वि शब्ददेखि औ आयो, बहुत्वसंख्या बुझिँदामा बहु शब्ददेखि जस् आयो र ती रूप सिद्ध भए ।

अब यहाँ यो शङ्का हुन्छ, एक शब्ददेखि 'सु' नल्याउँदा पनि एकसंख्या बुझिन्छ । त्यस्तै द्वि शब्दबाट औ र बहुशब्दबाट जस् नल्याए पनि द्वित्व बहुत्व बुझिन्छ । किन विभक्ति ल्याउने ? विभक्ति ल्याउनु व्यर्थ छ । यो प्रश्नको उत्तरमा भाष्यकार भन्नुहुन्छ कि "अपद न प्रयुञ्जीत" पदसंज्ञा नभएको शब्द प्रयोग गर्न हुँदैन । अतः पदसंज्ञा गर्न स्वादि ल्याउनु पर्‍यो र यसकारण पनि सूत्रमा वचन शब्दको ग्रहण गरियो । यहाँ पुनः यो शङ्का हुन्छ कि 'उक्तार्थानामप्रयोगः' 'अपदं न प्रयुञ्जीत' यी दुई शिष्टानुशासन पालन गर्न सकिने अर्को उपाय एक शब्ददेखि द्विवचन या बहुवचन, द्वि शब्ददेखि एकवचन या बहुवचन, बहु शब्ददेखि एकवचन या द्विवचन ल्याए के हुन्छ ? यसो गर्दा यहाँ अनन्वितार्थकविभक्तिकल्पना हुन्छ । जस्तो एक शब्दको अर्थ एकत्व संख्याबोधक छ द्विवचन र बहुवचन द्वित्व र बहुत्व बोधक छन् । अतः औ जस्को एक शब्दसँग अन्वय हुँदैन । त्यस्तै द्विशब्द र बहु शब्दमा पनि हुन्छ । अतः "अनन्वितार्थकविभक्तिकल्पनापेक्षयाऽनुवादकविभक्तिकल्पनमेव न्याय्यम्" (अनन्वितार्थक विभक्ति कल्पना गर्नु भन्दा अनुवादक (अर्थ दोहोरिने) विभक्ति कल्पना गर्नु नै ठीक छ ।) अतः एक शब्ददेखि एकवचन, द्वि शब्ददेखि द्विवचन र बहु शब्ददेखि बहुवचन नै गर्नुपर्दछ ।

प्र, परा आदि उपसर्ग र च, वा, ह आदि निपातको द्योत्य अर्थ हुन्छ र यी द्योतक छन् । द्योत्य अर्थ मान्दा यिनलाई अर्थवद धातुले प्रातिपदिकसंज्ञा हुन्छ । लिङ्ग सङ्ख्यादि नबुझिने हुनाले औत्सर्गिक एकवचन आउँछ । उच्चैस्, नीचैस्, आरात् आदि शब्द वाचक हुनाले प्रातिपदिकसंज्ञा हुने नै भयो । केवल पादपूरण प्रयोजन भएका तु, हि आदि निपातको द्योत्य अर्थ. पनि नहुनाले निरर्थक छन् । तिनलाई 'अपदं न प्रयुञ्जीत' भनेकाले "निपातस्य चानर्थकस्य" यो वार्तिकले प्रातिपदिकसंज्ञा हुन्छ र औत्सर्गिक प्रथमाको एकवचन सु आउँछ र लुक् हुन्छ । अथवा "अव्ययादाप्सुपः" यो सूत्र नै ज्ञापक हुनाले स्वादि आउँछन् र लुक् हुन्छ । भू आदि धातु र अनुकरणशब्द प्रातिपदिक नहुनाले तीदेखि स्वादि आउँदैनन् नआए पनि यिनलाई शुद्ध मानिन्छ ।

**संबोधने चेति**– संबोधन अर्थ अधिक बुझिएमा पनि प्रातिपदिकदेखि प्रथमा विभक्ति होस् ।

"पराभिमुखस्य स्वाभिमुखीकरणं संबोधनम्" अर्कातर्फ अभिमुख व्यक्तिलाई आफूतर्फ अभिमुख बनाउनु संबोधन हो । अथवा आफ्नो कुरा सुनाउन उसलाई आकृष्ट गर्नु संबोधन हो । यसैकारण संबोधन पद अलि उच्च स्वरमा उच्चारण गरिन्छ

**हे राम ! (ए राम !)**– संबोधन अर्थ बुझिँदामा राम शब्ददेखि "संबोधने च"ले प्रथमा विभक्ति सबै पायो, एकत्वसंख्याविशिष्ट रूप अर्थमा एकवचन सु आयो, विभक्तिकार्य भयो, हे शब्दको पूर्व प्रयोग भयो, 'हे राम' सिद्ध भयो । **प्रथमा विभक्ति सकियो ।**

**कर्तुरिति**– कर्ताको क्रियाद्वारा प्राप्त गर्न अतिशय अभीष्ट वस्तु कारकसंज्ञक भएर कर्मसंज्ञक होस् ।

**कारक**– "साक्षात् परम्परया वा क्रियाजनकत्वं कारकत्वम्"- प्रत्यक्ष रूपमा अथवा परम्पराले जसले क्रियाको सम्पादन गर्छ, त्यसलाई कारक भनिन्छ । कर्ता, कर्म र करण कारकले

**८८८. कर्मणि द्वितीया २।३।२॥**

अनुक्ते कर्मणि द्वितीया स्यात् । हरिं भजति । अभिहिते तु कर्मादौ प्रथमा–हरिः सेव्यते । लक्ष्म्या सेवितः ॥

**८८९. अकथितं च १।४।५१॥**

अपादानादिविशेषैरविवक्षितं कारकं कर्मसंज्ञं स्यात् ।

---

साक्षात् क्रियाको सम्पादन गर्दछन् । संप्रदान, अपादान र अधिकरण कारकले परम्परया क्रियाको सम्पादन गर्दछन् । कारक छ प्रकारका छन्- कर्ता, कर्म, करण, संप्रदान, अपादान, अधिकरण ।

कर्ताकारकः– क्रियामा स्वतन्त्र रूपले विवक्षित अर्थ कर्ता हो । यो माथि ण्यन्त प्रकरणमा भनिएको छ ।

कर्मकारक– कर्ताले क्रियाद्वारा पाउन खोजिएको अतिशय अभीष्ट वस्तुलाई "कर्तुरीप्सिततमं" यो सूत्रले कर्मसंज्ञा गर्दछ ।

करण, संप्रदान आदि कारकको विवरण सूत्रद्वारा तत्तत्स्थलमा प्रकरण अनुसार गरिने छ ।

अष्टाध्यायी सूत्रपाठमा दोस्रो अध्यायको तीन पाउको पहिलो सूत्र "अनभिहिते" यो हो । यसको अधिकार "कर्मणि द्वितीया" आदि सूत्रमा जान्छ ।

कर्मणीति- कर्म अनुक्त भएमा कर्मबोधक प्रातिपदिक देखि द्वितीयाविभक्ति होस् । "कर्मणि द्वितीया" आदि सूत्र "ङ्याप्प्रातिपदिकात्" यस सूत्रका नियामक छन् भन्ने कुरा माथि भनि सकिएको छ ।

**हरिं भजति (हरिलाई सेवा गर्छ)**– यस वाक्यमा भजन क्रियाको अतिशय ईप्सिततम अभीष्ट वस्तु 'हरि' छ र हरिलाई "कर्तुरीप्सिततमं०"ले कर्मसंज्ञा भयो । 'भजति' यो क्रिया कर्तामा भएको छ किनकि यहाँ लकार कर्तृवाच्य छ, त्यसो हुनाले यहाँ कर्ता उक्त छ, कर्म अनुक्त छ । कर्म अनुक्त हुनाले कर्मबोधक प्रातिपदिक हरि शब्ददेखि द्वितीया विभक्ति भयो । 'हरिं भजति' सिद्ध भयो ।

**अभिहितेति**- उक्त भएमा त कर्म, कर्ता आदि बोधक शब्ददेखि प्रथमा नै हुन्छ ।

**हरिः सेव्यते (हरि सेवा गरिन्छन्)**– यहाँ पनि सेवा गर्नु क्रियाको इष्टतम 'हरि' छ र हरि कर्म भयो, 'सेव्यते' यहाँ लकार कर्ममा गरिएको छ र कर्म उक्त छ । अतः "कर्मणि द्वितीया"ले द्वितीया भएन । "प्रातिपदिकार्थ०"ले हरि शब्ददेखि प्रथमाविभक्ति भयो, 'हरिः सेव्यते' सिद्ध भयो । यहाँ कर्तृबोधक पद छैन, कर्तृबोधक पद राख्दा 'त्वया हरिः सेव्यते' । 'मया हरिः सेव्यते' आदि उदाहरण प्रस्तुत गर्न सकिन्छ ।

**लक्ष्म्या सेवितः(लक्ष्मीले सेवा गरिएका)**– यहाँ सेवितः यो क्रियापद क्तप्रत्ययान्त छ, क्त प्रत्यय कर्ममा गरिएको छ र कर्म उक्त छ । अतः कर्मबोधक हरि शब्ददेखि प्रथमा विभक्ति हुन्छ, त्यसैको विशेषण भएर क्रियापद रहन्छ । जस्तै 'लक्ष्म्या सेवितो हरिः' यहाँ सेवा गर्ने-वाली लक्ष्मी कर्ता हुन् । कर्ता अनुक्त हुनाले आगामी सूत्र "कर्तृकरणयो स्तृतीया"ले लक्ष्मी शब्ददेखि तृतीयाविभक्ति भएको हो ।

**अकथितं चेति**– अपादान आदि विशेषकारकले विवक्षा नगरिएको कारक- क्रियासिद्धिमा प्रकृष्ट उपकारक वस्तु- कर्मसंज्ञक होस् । अपादान आदि "विवक्षाधीनं कारकम्" यो सिद्धान्त अनुसार कारकहरू विवक्षाका अधीनमा छन्, अपादानत्वादिको विवक्षा गर्दा त्यो वस्तु अपादान, करण, अधिकरण आदि हुन्छ भने विवक्षा नगरेमा त्यो अपादान आदि नभएर कर्म नै हुन्छ । तब त्यो गौण कर्म कहलाउँछ । मुख्य कर्मलाई "कर्तुरीप्सिततमम्०"ले कर्मसंज्ञा हुन्छ, गौण कर्मलाई "अकथितं च"ले कर्मसंज्ञा हुन्छ । त्यस्ता दुई कर्म भएका धातुलाई द्विकर्मक भनिन्छ । द्विकर्मक धातुको परिगणन मूलमा कारिकामा गरेको छ–

---

## विभक्त्यर्थप्रकरणम्

**"दुह्याच्पच्दण्ड्रुधिप्रच्छिचिब्रूशासुजिमथ्मुषाम् ।**
**कर्मयुक् स्यादकथितं तथा स्यान्नीहृकृष्वहाम् ॥१॥"**

गां दोग्धि पयः । बलिं याचते वसुधाम् । तण्डुलानोदनं पचति । गर्गान् शतं दण्डयति । व्रजमवरुणद्धि गाम् । माणवकं पन्थानं पृच्छति । वृक्षमवचिनोति फलानि । माणवकं धर्मं

---

**दुह्याजिति**– दुह्, याच्, पच्, दण्ड्, रुध्, प्रच्छ्, चि, ब्रू, शास्, जि, मथ्, मुष्, नी, हृ, कृष्, वह् यी धातुको मुख्य कर्मसँग सम्बन्ध भएका वस्तुको अपादानत्व आदि अविवक्षित भएमा गौण कर्म बन्दछन् ।

**गां दोग्धि पयः(गाईबाट दूध दुहुन्छ)**– यहाँ गो शब्द अपादानबोधक छ, तर अपादानको विवक्षा नगरेकोले यसलाई "अकथित च"ले कर्मसंज्ञा भयो, पयस् यसलाई "कर्तुरीप्सिततमम्"ले कर्मसंज्ञा भयो, अनि गोशब्द र पयस् शब्द दुवैदेखि द्वितीया विभक्ति भयो र 'गां दोग्धि पयः' यो रूप सिद्ध भयो । जब गो शब्दमा अपादानत्वको विवक्षा हुन्छ, तब गो शब्ददेखि पञ्चमी विभक्ति भएर 'गोर्दोग्धि पयः' यस्तो रूप हुन्छ । यस्तैप्रकारले अरू उदाहरणमा पनि गौण, कर्म र मुख्य कर्म स्मरण गर्नुपर्छ ।

**बलिं याचते वसुधाम् (बलिसँग पृथिवी माग्छन्)**– यहाँ बलिशब्द अपादान छ, यसमा अपादानत्वको विवक्षा नगर्दा "अकथितं च" कर्म संज्ञा भयो, वसुधालाई "कर्तुरीप्सिततम०" ले कर्मसंज्ञा भयो, तब दुवै शब्ददेखि "कर्मणि द्वितीया"ले द्वितीया विभक्ति भयो र उक्त रूप सिद्ध भयो ।

**तण्डुलान् ओदनं पचति (चामलद्वारा भात पकाउँछ)**– यहाँ तण्डुल करण छ, त्यसमा करणत्वको विवक्षा नगर्दा यसलाई "अकथितं च"ले कर्मसंज्ञा भयो, ओदनलाई "कर्तुरीप्सिततमम्०"ले कर्म संज्ञा भयो, दुवै शब्ददेखि द्वितीयाविभक्ति भयो र 'तण्डुलानोदनं पचति' यो रूप सिद्ध भयो । तण्डुलकरण मानेको पक्षमा 'तण्डुलैरोदनं पचति' यस्तो रूप हुन्छ ।

**गर्गान् शतं दण्डयति (गर्गहरूलाई सय रूपैयाँ डाँड्छ)**– यहाँ गर्ग शब्दको अपादानत्व विवक्षा नगरेमा "अकथितं च"ले पूर्ववत् कर्मसंज्ञा भयो, शतलाई "कर्तुरीप्सिततमम्०"ले कर्मसंज्ञा भयो, दुवैशब्ददेखि द्वितीयाविभक्ति भयो र उक्त रूप सिद्ध भयो । यहाँ शतं मुख्य कर्म हो । गर्ग गौण कर्म हो । गर्गलाई अपादान मानेमा 'गर्गेभ्यः शतं दण्डयति' यस्तो रूप हुन्छ ।

**व्रजमवरुणद्धि गाम् (गोठमा गाई रोक्छ)**– यहाँ व्रज अधिकरण हो, त्यसमा अधिकरणत्वको विवक्षा नगर्दा पूर्ववत् कर्मसंज्ञा भयो । गो शब्दलाई "कर्तुरीप्सिततमं०"ले कर्मसंज्ञा हुन्छ । यो मुख्य कर्म हो । व्रज शब्द र गोशब्द दुवैदेखि कर्ममा द्वितीया विभक्ति भयो र उक्त रूप सिद्ध भयो । व्रजको अधिकरणत्व विवक्षामा 'व्रजेऽवरुणद्धि गाम्' यस्तो हुन्छ ।

**माणवकं पन्थानं पृच्छति (बालकसँग बाटो सोध्छ)**– यहाँ माणवक अपादान हो, त्यसमा अपादानत्वको विवक्षा नगर्दा माणवकलाई "अकथितं च"ले कर्मसंज्ञा भयो । पथिन् शब्दलाई "कर्तुरीप्सिततमं०"ले कर्मसंज्ञा भयो र दुवै शब्ददेखि द्वितीया विभक्ति भयो र उक्त रूप सिद्ध भयो । माणवकलाई अपादान मानेमा 'माणवकात् पन्थानं पृच्छति' यस्तो रूप हुन्छ ।

**वृक्षमवचिनोति फलानि (रूखबाट फल टिप्छ)**– यहाँ वृक्ष अपादान हो, त्यसमा अपादानत्वको विवक्षा नगर्दा "अकथितं च"ले त्यसलाई कर्मसंज्ञा भयो । फल शब्दलाई "कर्तुरीप्सिततमं०"ले कर्मसंज्ञा भयो र दुवैशब्ददेखि द्वितीया विभक्ति भयो । उक्त रूप सिद्ध भयो । वृक्षमा अपादानत्व विवक्षा गरेमा 'वृक्षादवचिनोति फलानि' यस्तो रूप हुन्छ ।

**माणवकं धर्मं ब्रूते शास्ति वा (बालकलाई धर्म भन्छ अथवा शिक्षा दिन्छ)**– यहाँ माणवक संप्रदान हो, त्यसमा संप्रदानत्वको विवक्षा नगरेकोले त्यो पूर्ववत् कर्मसंज्ञक भयो । धर्मलाई

ब्रूते शास्ति वा। शतं जयति देवदत्तम्। सुधां क्षीरनिधिं मथ्नाति। देवदत्तं शतं मुष्णाति। ग्राममजां नयति हरति कर्षति वहति वा। अर्थनिबन्धनेयं संज्ञा। बलिं भिक्षते वसुधाम्। माणवकं धर्मं भाषते अभिधत्ते वक्तीत्यादि॥

**इति द्वितीया।**

---

"कर्तुरीप्सिततमं०"ले कर्मसंज्ञा भयो र दुवै शब्ददेखि द्वितीया विभक्ति आयो र उक्त रूप सिद्ध भयो। माणवकमा संप्रदानत्व विवक्षा गरेमा त्यसदेखि चर्तुथी विभक्ति हुन्छ र 'माणवकाय धर्मं वक्ति' यस्तो रूप हुन्छ।

**शतं जयति देवत्तम् (देवदत्तलाई सय रूपैयाँ जित्छ)**– यहाँ देवदत्त अपादान हो, त्यसको अविवक्षामा देवदत्तलाई कर्मसंज्ञा भयो। शत शब्दलाई "कर्तुरीप्सिततमं०"ले कर्मसंज्ञा भयो र दुवैशब्ददेखि द्वितीयाविभक्ति आयो र उक्त रूप सिद्ध भयो। देवदत्तलाई अपादान मानेमा त्यसदेखि पञ्चमी विभक्ति हुन्छ र 'शतं जयति देवदत्तात्' यस्तो रूप हुन्छ।

**सुधां क्षीरनिधिं मथ्नाति (समुद्रलाई अमृत मथन गर्छ)**– यहाँ क्षीरनिधि अपादान हो त्यसको अविवक्षामा "अकथितं च"ले कर्मसंज्ञा भयो। सुधा शब्दलाई "कर्तुरीप्सिततमं०"ले कर्मसंज्ञा भयो र दुवै शब्ददेखि द्वितीया विभक्ति आयो र उक्त रूप सिद्ध भयो। क्षीरनिधिलाई अपादान मानेमा त्यसदेखि पञ्चमी विभक्ति हुन्छ र 'सुधां क्षीरनिधेर्मथ्नाति' यस्तो रूप हुन्छ।

**देवदत्तं शतं मुष्णाति (देवदत्तबाट सय रूपैयाँ चोर्छ)**– यहाँ देवदत्त अपादान छ, त्यसको अविवक्षामा देवदत्तलाई कर्मसंज्ञा भयो। शत शब्दलाई "कर्तुरीप्सिततमं०"ले कर्मसंज्ञा भयो र दुवैशब्ददेखि द्वितीया विभक्ति भयो र उक्त रूप सिद्ध भयो। देवदत्तलाई अपादान मानेमा त्यसदेखि पञ्चमी विभक्ति हुन्छ र 'देवदत्तात् शतं मुष्णाति' यस्तो रूप हुन्छ।

**ग्राममजां नयति हरति कर्षति वहति वा (बाख्रीलाई गाउँमा लैजान्छ)**– यहाँ ग्राम अधिकरण छ, त्यसको अविवक्षामा "अकथितं च"ले कर्मसंज्ञा भयो। अजा शब्दलाई "कर्तुरीप्सिततमं०"ले कर्मसंज्ञा भयो र दुवैशब्ददेखि द्वितीया विभक्ति भयो र उक्त रूप सिद्ध भयो। ग्रामलाई अधिकरण मानेमा त्यसदेखि सप्तमी विभक्ति हुन्छ र 'ग्रामेऽजां नयति हरति कर्षति वहति वा' यस्तो रूप हुन्छ। यसरी उक्त सबै ठाउँमा "अकथितं च"ले कर्मसंज्ञा गरेका सबै गौण कर्म हुन्। "कर्तुरीप्सिततमं०"ले कर्मसंज्ञा गरेका मुख्य कर्म हुन्।

यहाँ कारिकामा दिइएका जो धातु छन् तिनको अर्थ लिनु पर्दछ। अर्थात् ती धातुमात्र हैनन् कि त्यो अर्थ हुने अरू धातु पनि लिइन्छन्। जस्तै याच् धातुको अर्थ भएको भिक्ष् धातु र ब्रू धातुको अर्थ भएको भाष् धातु, अभिपूर्वक धा धातु, वच् धातु पनि लिइन्छ। त्यस्तै अरू धातुका पनि समानार्थक धातु लिइन्छ।

**बलिं भिक्षते वसुधाम् (बलिसँग पृथिवी माग्छन्)**– यहाँ भिक्ष् धातुको अपादान बलिमा अपादानत्वको विवक्षा नगर्दा बलिलाई कर्मसंज्ञा भयो र वलि शब्ददेखि द्वितीया विभक्ति भयो।

**माणवकं धर्मं भाषते अभिधत्ते वक्ति वा** यहाँ भाष् धातु, अभि उपसर्ग पूर्वक धा धातु, वच् धातुको सम्प्रदान माणवकमा सम्प्रदानत्वको विवक्षा नगर्दा कर्मसंज्ञा भएर त्यसदेखि द्वितीया विभक्ति भयो।

**इति द्वितीया**

---

## विभक्त्यर्थप्रकरणम्

(सू.सं. ६९५. **स्वतन्त्रः कर्ता १।४।५४॥**
क्रियायां स्वातन्त्र्येण विवक्षितोऽर्थः कर्ता स्यात् ।)

८९०. **साधकतमं करणम् १।४।४२॥**
क्रियासिद्धौ प्रकृष्टोपकारकं करणसंज्ञं स्यात् ॥

८९१. **कर्तृकरणयोस्तृतीया २।३।१८॥**
अनभिहिते कर्तरि करणे च तृतीया स्यात् । रामेण बाणेन हतो बाली ॥

इति तृतीया ।

८९२. **कर्मणा यमभिप्रैति स सम्प्रदानम् १।४।३२॥**
दानस्य कर्मणा यमभिप्रैति स सम्प्रदानसंज्ञः स्यात् ॥

८९३. **चतुर्थी सम्प्रदाने २।३।१३॥**
विप्राय गां ददाति ॥

८९४. **नमस्स्वस्तिस्वाहास्वधालंवषड्योगाच्च २।३।१६॥**
एभिर्योगे चतुर्थी ।

---

**स्वतन्त्र इति**– क्रियामा स्वतन्त्रताले विवक्षा गरिएको अर्थ कारकसंज्ञक भएर कर्तृसंज्ञक होस् ।

**साधकतममिति**– क्रियाको सिद्धिमा प्रकृष्ट (अत्यन्त) उपकारक वस्तुलाई कारक संज्ञा भएर करण संज्ञा होस् । प्रकृष्ट उपकारक भनेको अत्यन्त उपकारक भन्ने अर्थ हो ।

**कर्तृकरणयोरिति**– कर्ता र करण अनुक्त भएमा कर्ता र करण अर्थ बुझाउने प्रातिपदिक देखि तृतीयाविभक्ति होस् ।

**रामेण वाणेन हतो बाली (रामले वाणद्वारा वालीलाई मारियो)**– यहाँ राम कर्ता र वाण करण छ वाली कर्म छ । हतः यो कर्ममा प्रत्यय भएको छ र कर्ता र करण अनुक्त छन् र दुवैदेखि तृतीया विभक्ति भयो, कर्म उक्त हुनाले कर्ममा 'हतः' यहाँ प्रथमा विभक्ति भयो ।

इति तृतीया

**कर्मणेति**– दिनु क्रियाका कर्मले जससँग सम्बन्ध राख्दछ, अर्थात् जसलाई उद्देश गरेर दिइन्छ, त्यो सम्प्रदानसंज्ञक होस् ।

**चतुर्थीति**– सम्प्रदान अर्थ अनुक्त भएमा सम्प्रदानबोधक शब्ददेखि चतुर्थी विभक्ति होस् ।

**विप्राय गां ददाति (बाहुनलाई गाई दिन्छ)**– यहाँ दिनुरूप क्रियाको कर्म गाई छ । गाईको सम्बन्ध ब्राह्मणसँग छ र विप्र शब्दलाई "कर्मणा यमभिप्रैति०"ले संप्रदान संज्ञा भयो र विप्र शब्ददेखि "चतुर्थी संप्रदाने"ले चतुर्थी विभक्ति भयो, 'विप्राय गां ददाति' सिद्ध भयो ।

[१३०]वैयाकरण भूषणसारमा द्वितीया तृतीया र सप्तमी विभक्तिको अर्थ आश्रय हुन्छ । पञ्चमी विभक्तिको अर्थ अवधि हुन्छ । चतुर्थी विभक्तिको अर्थ उद्देश्य र षष्ठी विभक्तिको अर्थ सम्बन्ध हुन्छ । कारक षष्ठीको अर्थ शक्ति हुन्छ । उक्त अर्थ बाहेक अरू प्रथमा विभक्तिको अर्थ हुन्छ भनिएकोले यहाँ 'विप्राय'को अर्थ 'विप्रमुद्दिश्य' हुन्छ ।

**नमः स्वस्तीति**– नमस्, स्वस्ति, स्वाहा, स्वधा, अलम्, वषट् शब्दको योगमा चतुर्थी विभक्ति होस् ।

---

१३० आश्रयोऽवधिरुद्देश्यः संबन्धः शक्तिरेव वा । यथायथं विभक्त्यर्थः सुपां कर्मेति भाष्यतः ॥
वैयाकरण भूषणसारे नामार्थनिर्णये !

हरये नमः । प्रजाभ्यः स्वस्ति । अग्नये स्वाहा । पितृभ्यः स्वधा । अलमिति पर्याप्त्यर्थग्रहणम् । तेन दैत्येभ्यो हरिरलं प्रभुः समर्थः । शक्त इत्यादि ॥ **इति चतुर्थी** ॥

**८९५. ध्रुवमपायेऽपादानम् १।४।२४॥**

अपायो विश्लेषस्तस्मिन्साध्ये यद् ध्रुवमवधिभूतं कारकं तदपादानं स्यात् ॥

**८९६. अपादाने पञ्चमी २।३।२८॥**

ग्रामादायाति । धावतोऽश्वात्पततीत्यादि ॥ **इति पञ्चमी ।**

**८९७. षष्ठी शेषे २।३।५०॥**

कारकप्रातिपदिकार्थव्यतिरिक्तः स्वस्वामिभावादिः संबन्धः शेषस्तत्र षष्ठी ।

---

**हरये नमः** (हरिलाई नमस्कार छ)- यहाँ नमस् शब्दको योगमा हरि शब्ददेखि चतुर्थी विभक्ति भयो र 'हरये नमः' सिद्ध भयो ।

**प्रजाभ्यः स्वस्ति (प्रजाहरूलाई कल्याण होस्)**- स्वस्तिशब्दको योगमा यहाँ प्रजा शब्ददेखि चतुर्थी विभक्ति भयो र 'प्रजाभ्यः स्वस्ति' सिद्ध भयो ।

स्वाहा शब्द देवतालाई हवि दिँदा र स्वधा शब्द पितृलाई कव्य दिँदा प्रयोग गरिन्छन् ।

**अग्नये स्वाहा (अग्निलाई यो हवि दिन्छु)**- यहाँ स्वाहा शब्दको योगमा अग्नि शब्ददेखि "नमःस्वस्ति०" यो सूत्रले चतुर्थी विभक्ति भयो र 'अग्नये स्वाहा' सिद्ध भयो ।

**पितृभ्यः स्वधा (पितृलाई कव्य दिन्छु)**- यहाँ स्वधा शब्दको योगमा पितृ शब्ददेखि प्रकृत सूत्रले चतुर्थी विभक्ति भयो र 'पितृभ्यः स्वधा' सिद्ध भयो ।

**दैत्येभ्यो हरिरलम्, (दैत्यका लागि हरि समर्थ छन्)**- यहाँ अलम् शब्दको योगमा दैत्य शब्ददेखि उक्त सूत्रले चतुर्थी भयो र 'दैत्येभ्यो हरिरलम्' सिद्ध भयो ।

**अलमिति**-अलम् शब्दले पर्याप्ति अर्थ भएका सबैशब्द लिइन्छ । त्यसकारण- प्रभुः समर्थ, शक्त शब्दको योगमा पनि चतुर्थी हुन्छ-

**तेनेति**-दैत्येभ्यो हरिः प्रभुः । दैत्येभ्यो हरिः समर्थः । दैत्येभ्यो हरिः शक्तः । यी उदाहरण पनि बन्दछन् । **इति चतुर्थी**

**ध्रुवमिति**- अपाय भनेको विभाग हो, त्यो साध्य भएमा जो स्थिर अवधिभूत कारक छ त्यो अपादानसंज्ञक होस् ।

**अपादाने इति**- अपादान अनुक्त भएमा अपादानबोधक शब्ददेखि पञ्चमी विभक्ति होस् ।

**ग्रामादायाति (गाउँदेखि आउँछ)**- यहाँ गाउँदेखि अलग भएर आउँछ, भन्ने बुझिएकोले ग्राम अवधि छ त्यो स्थिर पनि छ र "ध्रुवमपाये०"ले ग्राम शब्दलाई अपादानसंज्ञा भएकोले त्यसदेखि "अपादाने पञ्चमी"ले पञ्चमी विभक्ति भयो, 'ग्रामादायाति' सिद्ध भयो ।

**धावतोऽश्वात्पतति (दौड्ने घोडाबाट खस्छ)**- यहाँ पतन क्रियाले छुट्टिनु भन्ने बुझिन्छ । उसको अवधि अश्व छ र अश्व शब्दलाई "ध्रुवमपायेऽ०"ले अपादान संज्ञा भयो र त्यसदेखि "अपादाने पञ्चमी"ले पञ्चमी विभक्ति भयो । यस्तै अरू उदाहरण पनि जान्नू । **इति पञ्चमी**

**षष्ठीति**- कारक र प्रातिपदिकार्थदेखि भिन्न, स्वस्वामिभाव आदि सम्बन्ध शेष हो, त्यो शेष अर्थ अर्थात् सम्बन्ध अर्थ बुझिँदामा प्रतियोगिवाचक शब्ददेखि षष्ठी विभक्ति होस् ।

**प्रतियोगि र अनुयोगी**- 'यस्यान्वयः स प्रतियोगी', (जसको अन्वय हुन्छ त्यो प्रतियोगी हो) । 'यस्मिन् अन्वयः सोऽनुयोगी (जसमा अन्वय हुन्छ त्यो अनुयोगी हो) यो न्याय अनुसार राज्ञः

राज्ञः पुरुषः। कर्मादीनामपि संबन्धमात्रविवक्षायां षष्ठ्येव। सतां गतम्। सर्पिषो जानीते। मातुः स्मरति। एधो दकस्योपस्कुरुते। भजे शम्भोश्चरणयोः॥ **इति षष्ठी।**

८९८. **आधारोऽधिकरणम् १।४।४५॥**

कर्तृकर्मद्वारा तन्निष्ठक्रियाया आधारः कारकमधिकरणं स्यात्॥

८९९. **सप्तम्यधिकरणे च २।३।३६॥**

अधिकरणे सप्तमी स्यात्, चकाराद् दूरान्तिकार्थेभ्यः।

---

राज्ञः पुरुष यहाँ राजन् शब्द प्रतियोगिवाचक छ, पुरुष शब्द अनुयोगिवाचक छ। किन कि "राजाको पुरुष"भन्दा राजन् शब्दको पुरुष शब्दमा गएर अन्वय हुन्छ।

**राज्ञः पुरुषः (राजाको पुरूष)**- यहाँ राजा र पुरुषको स्वस्वामिभाव सम्बनध छ यस कारण प्रतियोगिवाचक राजन् शब्ददेखि "षष्ठी शेषे"ले षष्ठी विभक्ति भयो। यद्यपि सम्बन्ध दुवैमा छ तथापि प्रतियोगिवाचक (भेदक) राजन् शब्द छ त्यसैले राजन् शब्ददेखि षष्ठी भयो।

**पुरुषस्य राजा (मान्छेको राजा)**- यस्तो विवक्षामा पुरुष भेदक हुन्छ र पुरुष शब्ददेखि पनि षष्ठी विभक्ति हुन्छ। सम्बन्ध धेरै प्रकारका हुन्छन्। जस्तै- जन्यजनकभाव सम्बन्ध पुत्र र पितामा हुन्छ। त्यस्तै गन्तृगम्यभावसम्बन्ध, ज्ञातृज्ञेयभावसम्बन्ध, स्मर्तृस्मरणीयभाव सम्बन्ध आदि। कारकत्व विवक्षा नभएमा यी सबैबाट षष्ठीविभक्ति हुन्छ।

**कर्मादीनामपि**– कर्म आदि कारकहरूको पनि केवल सम्बन्ध मात्र विवक्षा गरिएमा षष्ठी विभक्ति हुन्छ।

**सतां गतम् (सज्जनको हिंडाइ)**- यहाँ कर्ता सत्(सज्जन) हुन्। कर्ताको सम्बन्धमात्र विवक्षा गरियो। कारकत्व विवक्षा गरिएन र षष्ठी विभक्ति भयो। कर्ता कारकको विवक्षा गरेमा भावमा प्रत्यय भएको स्थलमा कर्ता सत् शब्ददेखि तृतीया विभक्ति भएर 'सद्भिर्गतम्' यस्तो रूप हुन्छ।

**सर्पिषो जानीते**- (घिऊका कारणले प्रवृत्त हुन्छ) यहाँ घिऊ करण हो, करणको विवक्षा नगर्दा सर्पिष् शब्ददेखि षष्ठी विभक्ति भयो र उक्त रूप सिद्ध भयो।

**मातुः स्मरति**– यहाँ स्मरण क्रियाको कर्म माता(आमा) हुन्। मातृशब्दमा कर्मत्वको विवक्षा नगरेर सम्बन्ध मात्र विवक्षा गर्दा षष्ठी विभक्ति भयो र उक्त रूप सिद्ध भयो।

**एधो दकस्योपस्कुरुते**- (दाउराले पानीमा रङ्ग ल्याउँछ) दक शब्द जलवाचक छ। यहाँ दक कर्म छ, त्यसमा कर्मत्वको विवक्षा नगर्दा त्यसदेखि सम्बन्धमात्रमा षष्ठी भयो र उक्त रूप सिद्ध भयो।

**भजे शम्भोश्चरणयोः**– यहाँ भजन क्रियाको कर्म शिवका दुई चरण हुन्। अतः 'चरण'मा कर्मत्वको विवक्षा नगर्दा चरण शब्ददेखि षष्ठी विभक्ति भयो र सिद्ध भयो। **इति षष्ठी**

**आधार इति**– कर्ता र कर्मद्वारा कर्ता र कर्ममा रहने क्रियाको आधार कारक संज्ञा भएर अधिकरणसंज्ञक होस्।

अधिकरण साक्षात् क्रियाको आधार हुँदैन। कर्ता या कर्मको आधार हुन्छ। अनि कर्ता र कर्ममा रहेका-(कर्ता अर्थमा वा कर्ममा विधान गरिएका)-क्रियाको आधार हुन्छ। यसरी परम्परया क्रियाको आधार हुन्छ।

**सप्तमीति**– अधिकरण अनुक्त भएमा अधिकरण अर्थबोधक शब्ददेखि सप्तमी विभक्ति होस्। चकार पढ्नाले दूरार्थबोधक र अन्तिकार्थबोधक शब्द ददेखि पनि सप्तमी विभक्ति होस्।

**औपश्लेषिक इति**– औपश्लेषिक, वैषयिक, अभिव्यापक, यी भेदले आधार तीन प्रकारको छ।

औपश्लेषिको वैषयिकोऽभिव्यापकश्चेत्याधारस्त्रिधा। कटे आस्ते। स्थाल्यां पचति। मोक्षे इच्छास्ति। सर्वस्मिन्नात्मास्ति। वनस्य दूरे अन्तिके वा॥ **इति सप्तमी॥**

## इति विभक्त्यर्थप्रकरणम्॥

---

**औपश्लेषिक**– उपश्लेषेण कृतः- औपश्लेषिकः (नगीचमा संयोगसम्बन्धले बनाइएको)

**वैषयिक**- (विषयेण कृतः- वैषयिकः (विषयले बनाइएको)

**अभिव्यापक**- (अभिव्याप्नोति इति- अभिव्यापकः (व्याप्त भएर रहने)

औपश्लेषिक- जुन आधारमा कर्ता या कर्मको संयोग हुन्छ, त्यो औपश्लेषिक आधार हो। जस्तै 'कटे आस्ते' यहाँ आसनक्रियाका कर्ताको आधार कट छ। कटको र आसनक्रियाका कर्ताको संयोगसम्बन्ध छ। यसैले कट औपश्लेषिक आधार हो। 'स्थाल्यां पचति' यहाँ ओदनको कर्मनिष्ठ क्रियाद्वारा कर्मको आधार थाली छ, अत थाली औपश्लेषिक आधार भयो।

**वैषयिक**- विषयलाई लिइएर हुने आधार वैषयिक हो। 'मोक्षे इच्छास्ति' यहाँ इच्छा क्रियाको विषय मोक्ष छ, अत मोक्ष वैषयिक आधार भयो।

**अभिव्यापक**- "सर्वस्मिन् आत्माऽस्ति" सबैमा आत्मा छ यहाँ आत्मकर्तृक सत्ताक्रियाको आधार 'सर्व' छ यो आत्मा सबैमा अभिव्याप्त भएर रहने हुँदा सर्व अभिव्यापक आधार भयो।

**कटेआस्ते, स्थाल्यां पचति। मोक्षे, इच्छास्ति। सर्वस्मिन् आत्मा अस्ति** - यहाँ उपर्युक्त विवेचनअनुसार 'कट' र 'स्थाली', औपश्लेषिक आधार, 'मोक्ष' वैषयिक आधार, 'सर्व' अभिव्यापक आधार भएकोले "आधारोऽधिकरणम्"ले कट, स्थाली, मोक्ष, सर्व, यिनलाई अधिकरण संज्ञा भयो र यी शब्ददेखि "सप्तम्यधिकरणे च"ले सप्तमी विभक्ति भयो र उक्त रूप सिद्ध भए।

**वनस्य दूरे अन्तिके वा**- (वनको टाढा अथवा नजीकमा) यहाँ दूर शब्द दूरार्थवाचक अन्तिक शब्द अन्तिकार्थवाचक भएकोले यी दुवै शब्ददेखि "सप्तम्यधिकरणे च"ले सप्तमी विभक्ति भयो।

**इति सप्तमी**

**विभक्त्यर्थप्रकरण समाप्त भयो।**

-----------------------

## अथ समासप्रकरणम्

### तत्रादौ केवलसमासः ।

समासः पञ्चधा । तत्र समसनं समासः । स च विशेषसंज्ञाविनिर्मुक्तः केवलसमासः प्रथमः ॥१॥ प्रायेण पूर्वपदार्थप्रधानोऽव्ययीभावो द्वितीयः ॥२॥ प्रायणोत्तरपदार्थप्रधानस्तत्पुरुषस्तृतीयः ॥ तत्पुरुषभेदः कर्मधारयः । कर्मधारयभेदो द्विगुः ॥३॥ प्रायेणान्यपदार्थप्रधानो बहुव्रीहिश्चतुर्थः ॥४॥

---

**अब समास प्रकरण आरम्भ गरिन्छ ।**

**त्यसमा पहिले केवलसमास छ ।**

**समासः पञ्चधेति**– समास पाँच प्रकारको छ । १. **केवलसमास**, २ **अव्ययीभावसमास**, ३. **तत्पुरुषसमास**, ४. **बहुव्रीहिसमास** र ५. **द्वन्द्वसमास** ।

**तत्रेति**– त्यहाँ संक्षेपीकरण भनेको समास हो । अर्थात् अनेक पदलाई एकपद बनाउनु समास हो ।

**केवल समास**– समासहरूमा सबैभन्दा पहिलो विशेषसंख्या नभएको केवल समास छ । केवल समास भनेको खालि समास-नाम नभएको समास हो । कुनै संज्ञा नभएको हुनाले यसलाई केवलसमास भनियो । अनि रूढसंज्ञा नै केवलसमास भयो । जस्तै साहिली औंलालाई केही नाम नभएको भनेर अनामिका भनियो आखिर त्यही नामले त्यो प्रसिद्ध भयो ।

**अव्ययीभावसमास**– प्रायः पूर्वपदको अर्थ प्रधान भएको अव्ययीभावसमास दोस्रो छ । जस्तै अधिहरि (हरिमा) यहाँ 'मा' यो सप्तमी विभक्तिको अर्थ भएको अधि शब्दको अर्थ प्रधान छ । सप्तमी विभक्तिको अर्थ अधिबाट बुझिन्छ । प्रायेण भन्नाले उन्मत्तगङ्गम्, लोहितगङ्गम्, यहाँ अन्यपदार्थ प्रधान छ तर अव्ययीभावसमास हो । यसैकारण प्रायेण भनिएको हो ।

**तत्पुरुषसमास**– प्रायः उत्तरपदको अर्थप्रधान भएको तेस्रो तत्पुरुषसमास हो । 'राजपुरुषः', 'ब्राह्मणकम्बलः' इत्यादि यसका उदाहरण हुन् । यहाँ 'राजपुरुष' शब्दमा र 'ब्राह्मणकम्बल' शब्दमा उत्तरपद 'पुरुष'शब्दको र 'कम्बल'शब्दको अर्थ प्रधान छ । प्रायेण कहनाले कहीं पूर्वपदार्थ प्रधान वा अन्य पदार्थ प्रधान तत्पुरुषसमास पनि हुन्छ । जस्तै अर्धपिप्पली । पूर्वकायः । यी दुवै पूर्वपदार्थ प्रधान तत्पुरुष हुन् । 'पञ्चतन्त्रम्' यहाँ पनि उत्तरपदार्थ प्रधान छैन, अन्य पदार्थ-समाहार- प्रधान तत्पुरुषसमास छ ।

**कर्मधारयसमास**– तत्पुरुषसमासको भेद कर्मधारयसमास हो । जहाँ विशेष्य विशेषणको समास हुन्छ । 'नीलोत्पलम्' (नीलो कमल) इत्यादि यसका उदाहरण हुन् । 'नीलोत्पल'शब्दमा उत्तरपद 'उत्पल'शब्दको अर्थ प्रधान छ ।

**द्विगुसमास**– कर्मधारयसमासको भेद द्विगुसमास हो । यहाँ विशेष्य विशेषणको समास हुन्छ, विशेषण पूर्वपद हुन्छ । सङ्ख्यावाचक विशेषण पूर्वपद भयो भने, द्विगुसमास हुन्छ । 'पञ्चगवम्' आदि यसका उदाहरण हुन् ।

**बहुव्रीहिसमास**– प्रायेण अन्य पदार्थ प्रधान बहुव्रीहिसमास चौथो हो । 'लम्बकर्णः', 'अधीतविद्यः'

प्रायेणोभयपदार्थप्रधानो द्वन्द्वः पञ्चमः ॥५॥

**९००. समर्थः पदविधिः २।१।१॥**

पदसंबन्धी यो विधिः स समर्थाश्रितो बोध्यः॥

**९०१. प्राक्कडारात्समासः २।१।३॥**

कडाराः कर्मधारय इत्यतः प्राक् समास इत्यधिक्रियते ॥

**९०२. सह सुपा २।१।४॥**

सुप् सुपा सह वा समस्यते ॥ समासत्वात्प्रातिपदिकत्वेन सुपो लुक् । परार्थाभिधानं वृत्तिः । कृत्तद्धितसमासैकशेषसनाद्यन्तधातुरूपाः पञ्च वृत्तयः । वृत्त्यर्थावबोधकं वाक्यं विग्रहः । स च लौकिकोऽलौकिकश्चेति द्विधा । तत्र पूर्वं भूत इति लैकिकः । 'पूर्व अम् भूत सु' इत्यलौकिकः । भूतपूर्वः ।

---

आदि यसका उदाहरण हुन् । यहाँ 'यस्य', 'अस्य' आदि अन्यपदको अर्थ प्रधान हुन्छ । प्रायः भन्नाले पञ्चषाः, द्वित्राः आदि ठाउँमा उभयपदार्थ प्रधान पनि हुन्छ ।

**द्वन्द्वसमास**– प्रायेण उभयपदार्थ प्रधान-दुवै पदको अर्थ प्रधान हुने- पाँचौ द्वन्दसमास हो । यसका उदाहरण 'हरिहरौ', 'रामलक्ष्मणौ' आदि हुन् । प्रायेण भन्नाले 'अहिनकुलम्' आदि ठाउँमा अन्यपदार्थ -समाहार अर्थ- प्रधान हुन्छ ।

यी समासहरूको सङ्ग्रह भएको एक द्व्यर्थक श्लोक छ–

"द्वन्द्वो द्विगुरपि चाहं मद्गेहे नित्यमव्ययीभावः ।
तत्पुरुष ! कर्मधारय येनाऽहं स्यां बहुव्रीहिः ॥"

कुनै कविले राजासँग द्रव्य माग्दै भन्दछन्– हामी आफ्नो परिवारमा पति पत्नी दुई मात्र छौं, यसैले म द्वन्द्व छु । ('स्त्रीपुंसौ मिथुनं द्वन्द्वम्' अमरकोष.) मेरा दुई गोरू छन् र म द्विगु भएँ । मेरो घरमा सधैं अव्ययीभाव छ, खर्च हुनुलाई व्ययीभाव भनिन्छ । केही भए पो खर्च हुन्छ केही धन छैन अतः खर्च हुँदैन, अतः म अव्ययीभावयुक्त छु । हे पुरुष महाराज ! त्यो कर्म (काम) धारय (दिनुहोस्) जसबाट म बहुव्रीहि -धेरै धान भएको- बनूँ । अर्थात् मैले केही खेत किन्न सकूँ र प्रशस्त धान उब्जाउन सकूँ ।

[१३१] **समर्थ इति**– पदसम्बन्धी जो विधि छ, त्यो एकार्थीभावरूप सामर्थ्यलाई आश्रय गरेको हुन्छ भन्ने जान्नू ।

**प्रागिति**– "कडाराः कर्मधारये" २।२।३८ भन्ने सूत्रदेखि पूर्वको सूत्रसम्म "समासः" यो पदको अधिकार गरिन्छ ।

**सहेति**– सुबन्त समर्थ, सुबन्त समर्थका साथ विकल्पले समास गरिन्छ ।

**समासत्वादिति**– समास भएको हुनाले प्रातिपदिकसंज्ञा हुन्छ र सुप्को लुक् हुन्छ ।

**परार्थेति**– अर्काको अर्थ बताउनुलाई वृत्ति भनिन्छ । वृत्तिको अर्थ बुझाउने वाक्यलाई विग्रह भनिन्छ । विग्रह लौकिक र अलौकिक गरेर दुई प्रकारको हुन्छ ।

**तत्रेति**– त्यहाँ 'पूर्वं भूतः' यो लौकिक विग्रह हो । 'पूर्व अम् भूत सु' यो अलौकिक विग्रह हो ।

**भूतपूर्वः**– 'पूर्वं भूतः' यो लौकिक विग्रहमा 'पूर्व+अम्+भूत+सु' यो अलौकिक (शास्त्रीय)

---

१३१ एकार्थीभावरूप सामर्थ्य भनेको समास गरिने पदहरुको समूचा यौटै अर्थ हुनु हो । जस्तो कि "पश्यति कृष्णं श्रितो देवतत्तम्" यहाँ कृष्ण शब्द र श्रित शब्दको एकार्थीभावरूप सामर्थ्य छैन र "द्वितीयाश्रिता०"ले समास हुँदैन ।

भूतपूर्वे चरडिति निर्देशात्पूर्वनिपातः। (वा.) (इवेन वा समासो विभक्त्यलोपश्च) वागर्थौ इव वागर्थाविव ॥

इति केवलसमासः ॥१॥

## अथाव्ययीभावसमासः

**९०३. अव्ययीभावः २।१।५॥**

अधिकारोऽयं प्राक् तत्पुरुषात् ॥

**९०४. अव्ययं विभक्तिसमीपसमृद्धिव्यृद्ध्यर्थाभावात्ययासंप्रतिशब्दप्रादुर्भावपश्चाद्यथानुपूर्व्य-यौगपद्यसादृश्यसम्पत्तिसाकल्यान्तवचनेषु २।१।६॥**

विभक्त्यर्थादिषु वर्तमानमव्ययं सुबन्तेन सह नित्यं समस्यते सोऽव्ययीभावः।

---

विग्रहमा, "सह सुपा"ले समास भयो, "कृत्तद्धितसमासाश्च"ले 'पूर्व+अम्+भूत+सु'लाई प्रातिपदिक संज्ञा भयो, "सुपो धातुप्रातिपदिकयोः"ले अम् र सु को लोप भयो। "भूतपूर्वे चरट्" यस सूत्रमा भूत शब्दको पूर्व प्रयोग भएकोले यहाँ पनि भूत शब्दको पूर्वप्रयोग भयो। 'भूतपूर्व' शब्द बन्यो, 'भूतपूर्व' यसलाई प्रातिपदिकसंज्ञा भएकोले यसदेखि सु आयो, 'भूतपूर्वः' सिद्ध भयो।

(वा.) **इवेनेति**– इव शब्दका साथ सुबन्तसमर्थको वैकल्पिक समास होस्, विभक्तिको लोप पनि नहोस्।

**वागर्थाविव**– 'वाक् च अर्थश्च' यस विग्रहमा द्वन्द्वसमास भएर 'वागर्थौ' शब्द बन्दछ, 'वागर्थौ इव' यो लौकिक विग्रहमा 'वागर्थ+औ+इव'को "इवेन वा समासो०" यस वार्तिकले समास भयो, 'प्रातिपदिकत्वात् औ' को लुक् पाएको यही वार्तिकले निषेध भयो, वागर्थौका औकारका स्थानमा आव् आदेश भयो, 'वागर्थाविव' सिद्ध भयो। समास नहुँदा पनि 'वागर्थाविव' यो रूप नै हुन्छ तर स्वरमा फरक हुन्छ।

**समासको फल**– समास गर्नका तीन फल छन्– (१) एकपद हुनु, (२) विभक्तिको लोप भएर संक्षिप्त हुनु (३) एक पदत्वात् स्वरमा फरक हुनु।

'वागर्थाविव' यहाँ समास भएर विभक्तिलोप नभए पनि स्वर फरक हुनु फल छ।

**केवल समास सकियो**

**अब अव्ययीभाव समास शुरू गरिन्छ**

**अव्ययीभाव इति**– "तत्पुरुषः" यो सूत्रदेखि पूर्वसम्म "अव्ययीभावः" यो सूत्रको अधिकार गरिन्छ।

**अव्ययमिति**– विभक्ति, समीप, समृद्धि, व्यृद्धि, अर्थाभाव, अत्यय, असंप्रति, शब्दप्रादुर्भाव, पश्चात्, यथा, आनुपूर्व्य, यौगपद्य, सादृश्य, संपत्ति, साकल्य, समाप्ति यी १६ अर्थमा वर्तमान सुबन्तसमर्थका साथ अव्ययको समास होस्, त्यो समासलाई अव्ययीभाव संज्ञा पनि होस्।

---

प्रायेणाविग्रहो नित्यसमासः । प्रायेणास्वपदविग्रहो वा । विभक्तौ, हरि ङि अधि इति स्थिते ।

**९०५. प्रथमानिर्दिष्टं समास उपसर्जनम् १।२।४३॥**

समासशास्त्रे प्रथमानिर्दिष्टमुपसर्जनसंज्ञं स्यात् ॥

**९०६. उपसर्जनं पूर्वम् २।२।३०॥**

समासे उपसर्जनं प्राक्प्रयोज्यम् । इत्यधेः प्राक् प्रयोगः । सुपो लुक् । एकदेशविकृतस्यानन्यत्वात्प्रातिपदिकसंज्ञायां स्वाद्युत्पत्तिः । अव्ययीभावश्चेत्यव्ययत्वात्सुपो लुक् । अधिहरि ॥

---

**प्रायेणेति**– नित्यसमास प्रायः विग्रह नै नभएको हुन्छ, अथवा प्रायः अस्वपदविग्रह (जुन जुन पदको समास भएको छ ती सबै पद विग्रहमा नभएको) हुन्छ । यहाँ विग्रह भन्नाले लौकिक विग्रहलाई लिइएको छ, अलौकिकविग्रह त सबै समासको हुन्छ नै । अविग्रहसमास सम्बन्धमा- विग्रहनै नहुने समास 'कृष्णसर्प' हो । यसको लौकिक विग्रह कृष्णः सर्पः हुनै सक्दैन र यो नित्य समास हो । यो उदाहरण तत्पुरुषसमासमा छ । अस्वपदविग्रह सम्बन्धमा जस्तै- अधिहरि शब्दमा हरि शब्दसँग अधि शब्दको समास हुन्छ र अधिहरि बन्दछ । तर लौकिक विग्रह 'हरौ' यस्तो गरिन्छ, यो विग्रहमा अधि शब्द छैन । त्यस्तै उपकृष्णम् सुमद्रम् आदि ठाउँमा पनि कृष्णस्य समीपम्, मद्राणां समृद्धि, इत्यादि लौकिक विग्रह राखेर कृष्ण मद्र आदि शब्दसँग उप सु, आदि शब्दको समास हुन्छ । लौकिक विग्रहमा राखिएका समीप, समृद्धि, आदि शब्दहरू अलौकिक विग्रहमा देखिन्नन् । अतः यो अव्ययीभावसमास अस्वपद विग्रह नित्य समास हो भन्ने यो भनाइको अभिप्राय हो ।

**विभक्ताविति**– विभक्ति अर्थमा वर्तमान 'अधि' यो अव्ययको हरिशब्दसँग समास गर्दा हरि, ङि अधि यो स्थिति हुन्छ ।

**प्रथमेति**– समासविधायक [१३१] शास्त्रमा प्रथमान्तले देखाइएको पद उपसर्जनसंज्ञक होस् ।

**उपसर्जनमिति**– समासमा उपसर्जनसंज्ञक शब्दको पूर्वप्रयोग गर्नुपर्छ ।

**इत्यधेरिति**– "उपसर्जनं पूर्वम्" यो सूत्र लगाएर अधि शब्दको पूर्वप्रयोग हुन्छ ।

**सुपो लुगिति**– 'हरि+ङि+अधि'लाई "कृत्तद्धितसमासाश्च"ले प्रातिपदिकसंज्ञा भएपछि "सुपो धातुप्रातिपदिकयोः" ले सुप् अर्थात् ङिको लुक् हुन्छ ।

**एकदेशेति**-एकदेश विकृत भए पनि अर्को जस्तो नहुने हुनाले 'अधिहरि' यसलाई प्रातिपदिकसंज्ञा यथावत् रहन्छ र पुनः स्वादि विभक्ति आउँछन् । यो भनाइको तात्पर्य हो- 'अधिहरि+ङि' यसलाई पहिले प्रातिपदिक संज्ञा भएको थियो । अहिले ङिको लुक् भएपछि प्रातिपदिकको एकदेश विकृत भएर 'अधिहरि' भएको भए पनि "एकदेशविकृतमनन्यवत्" यो परिभाषा लगाएर त्यसलाई प्रातिपदिक मानिन्छ । "एकदेशविकृतमनन्यवत्" यो परिभाषाको व्याख्यान पुंलिङ्ग प्रकरणमा जरा शब्दमा गरिएको छ ।

**अधिहरि (हरिमा)**– 'हरौ' इति यस लौकिकविग्रहमा 'हरि+ङि+अधि' यस्तो स्थितिमा 'हरि+ङि'का साथ सप्तमी विभक्तिको अर्थमा वर्तमान 'अधि'यो अव्ययको "अव्ययं विभक्ति"ले

---

१३२ समास गर्ने शास्त्र (सूत्र)मा प्रथमान्त पद कुन छ, त्यसले कसलाई निर्देश गरेको छ यो कुरा सर्वत्र स्मरण गर्नु पर्छ । जस्तै "अव्ययं विभक्ति०" यस सूत्रमा 'अव्ययम्' यो प्रथमान्त पद छ त्यसले देखाइएको 'अधि'शब्द उपसर्जन भयो र त्यसको पूर्व प्रयोग भयो 'अधिहरि' भयो । त्यस्तै पञ्चगङ्गम् यहाँ 'नदीभिश्च' यस सूत्रमा प्रथमान्तपद सङ्ख्या छ त्यसले देखाइएको पद पञ्चन् जस छ र त्यो उपसर्जनसंज्ञक हुन्छ र त्यसको पूर्वप्रयोग हुन्छ ।

**९०७. अव्ययीभावश्च २।४।१८॥**

अयं नपुंसकं स्यात् ॥

**९०८. नाव्ययीभावादतोऽम्त्वपञ्चम्याः २।४।८३॥**

अदन्तादव्ययीभावात्सुपो न लुक्, तस्य पञ्चमीं विना अमादेशश्च स्यात् ॥ गाः पातीति गोपास्तस्मिन्नित्यधिगोपम् ॥

**९०९. तृतीयासप्तम्योर्बहुलम् २।४।८४॥**

अदन्तादव्ययीभावात्तृतीयासप्तम्योर्बहुलमम्भावः स्यात् । अधिगोपम्, अधिगोपेन, अधिगोपे वा । कृष्णस्य समीपम् उपकृष्णम् ।

---

समास भयो । 'हरि+ङि+अधि' यहाँ "प्रथमानिर्दिष्टम्०"ले समासविधायक शास्त्र "अव्ययं विभक्ति०" यस सूत्रमा "अव्ययं" यस प्रथमान्तले देखाइएको पद 'अधि'लाई उपसर्जन संज्ञा भयो र "उपसर्जनं पूर्वम्"ले अधि शब्दको पूर्वप्रयोग भयो 'अधि+हरि+ङि' भयो, "कृत्तद्धितसमासाश्च"ले प्रातिपदिकसंज्ञा भयो, "सुपो धातुप्रातिपदिकयोः"ले सुप्को लुक् भयो, 'अधिहरि' भयो । अधिहरि यसलाई "अव्ययीभावश्च"ले अव्ययसंज्ञा भयो । "एकदेशविकृतमनन्यवत्" यो परिभाषा लगाएर प्रातिपदिकसंज्ञा भयो, सु आदि विभक्ति आए, "अव्ययादाप्सुपः"ले लुक् भयो, 'अधिहरि' सिद्ध भयो । सबै विभक्ति र वचनमा 'अधिहरि' यही एकरूप भयो ।

**अव्ययीभावश्चेति–** अव्ययीभावसमास पनि नपुंसक लिङ्ग होस् ।

**गाः पातीति–** गाईलाई रक्षा गर्छन् भन्दा गोपा शब्द बन्दछ गोपा शब्दको ङिमा 'गोपि' हुन्छ । गोपि इति (गोठालामा भन्दा) 'अधिगोपम्' यो रूप हुन्छ ।

**नाव्ययीभावादिति–** अकारान्त अव्ययीभावसमासदेखि पररहेका सुप्को लुक् नहोस् तर त्यसदेखि पर रहेका पञ्चमी विभक्तिबाहेक अरू विभक्तिका स्थानमा अम् आदेश होस् ।

**अधिगोपम्–** गोपि यस्तो लौकिकविग्रहमा 'गोपा+ङि+अधि' यहाँ "अव्ययं विभक्ति०"ले विभक्ति अर्थमा वर्तमान अव्यय 'अधि'को 'गोपा+ङि' सँग समास भयो, अव्ययीभाव संज्ञा भयो, अधिलाई "प्रथमानिर्दिष्टं०"ले उपसर्जन संज्ञा भयो, "उपसर्जनं पूर्वम्"ले अधिको पूर्वप्रयोग भयो, 'अधि+गोपा+ङि' भयो, विभक्तिको लुक् भयो, 'अधिगोपा' शब्द बन्यो, यसलाई "अव्ययीभावश्च"ले नपुंसकलिङ्ग भयो, "ह्रस्वो नपुंसके०"ले ह्रस्व भयो, 'अधिगोप' भयो, 'अधिगोप' शब्ददेखि प्रथमाको एकवचन सु आयो, त्यसको "अव्ययादाप्सुपः"ले लुक् पायो, त्यसलाई बाधेर "नाव्ययीभावात्"ले सुका स्थानमा अम् भयो, पूर्वरूप भयो । 'अधिगोपम्' सिद्ध भयो ।

**तृतीयेति–** अकारान्त अव्ययीभावसमासदेखि पर रहेका तृतीया र सप्तमी विभक्तिका स्थानमा विकल्पले अम् आदेश होस् ।

**(विभक्ति अर्थमा), अधिगोपम्/अधिगोपेन–** अधिगोप शब्ददेखि टा आयो, लुक्लाई बाधेर "नाव्ययीभावात्०"ले नित्य अम् पाएकोमा बाधेर "तृतीयासप्तम्योः०"ले सुका स्थानमा वैकल्पिक अम् भयो, पूर्वरूप भयो, 'अधिगोपम्' सिद्ध भयो । अम् नभएको पक्षमा टाका स्थानमा इन आदेश, गुण भयो, 'अधिगोपेन' सिद्ध भयो । यस्तै भ्याम्मा अधिगोपम्/अधिगोपाभ्याम्, भिस्मा पनि अधिगोपम्/अधिगोपैः, सप्तमीमा पनि अधिगोपम्/अधिगोपे । अधिगोपम्/अधिगोपयोः, अधिगोपम्/अधिगोपेषु । हुन्छ अरू विभक्तिमा खालि अधिगोपम्, अधिगोपम् यही रूप बन्दछ ।

**(समीप अर्थमा), उपकृष्णम् (कृष्णको नजीकमा)–** कृष्णस्य समीपम् यो लौकिक विग्रहबोध्य, 'कृष्ण+ङस्+उप' यो अलौकिक विग्रहमा 'कृष्ण+ङस्'का साथ समीप अर्थमा वर्तमान 'उप'शब्दको

मद्राणां समृद्धिः सुमद्रम्। यवनानां व्यृद्धिर्दुर्यवनम्। मक्षिकाणामभावो निर्मक्षिकम्। हिमस्यात्ययोऽतिहिमम्। निद्रा संप्रति न युज्यत इत्यतिनिद्रम्।

---

"अव्ययं विभक्ति०"ले समास भयो, पूर्ववत् उपको पूर्वप्रयोग भयो, विभक्तिको लुक् भयो, 'उपकृष्ण'शब्द बन्यो, यो नपुंसक लिङ्ग भयो, त्यसदेखि सु आयो लुक्लाई बाधेर "नाव्ययी भावात्०"ले अम् भयो, 'उपकृष्णम्' सिद्ध भयो। यस्तै प्रकारले औ, जस्, अम्, औट्, शस्मा पनि 'उपकृष्णम्' यो रूप सिद्ध हुन्छ।

**उपकृष्णम्, उपकृष्णेन**– उपकृष्ण शब्ददेखि तृतीयाको एकवचन टा आयो "तृतीयासप्तम्योः०"ले टाका स्थानमा वैकल्पिक अम्आदेश भयो, 'उपकृष्णम्' सिद्ध भयो। अम् आदेश नभएमा टाका स्थानमा इन आदेश भयो, 'उपकृष्णेन' सिद्ध भयो। यस्तैप्रकारले भ्याम्, भिस्मा र ङि, ओस्, सुप्मा पनि वैकल्पिक अम्भाव हुन्छ। अकारान्त अव्यय शब्द अधिगोप, सुमद्र, निर्मक्षिक आदि सबै शब्दको निदर्शनार्थ उपकृष्ण शब्दका पूरा रूप तल प्रस्तुत गरिन्छ -

| विभक्ति | एकवचन | द्विवचन | बहुवचन |
|---|---|---|---|
| **प्रथमाः**– | उपकृष्णम् | उपकृष्णम् | उपकृष्णम् |
| **द्वितीयाः**– | उपकृष्णम् | उपकृष्णम् | उपकृष्णम् |
| **तृतीयाः**– | उपकृष्णम्/उपकृष्णेन | उपकृष्णम्/उपकृष्णाभ्याम् | उपकृष्णम्/उपकृष्णैः |
| **चतुर्थी**– | उपकृष्णम् | उपकृष्णम् | उपकृष्णम् |
| **पञ्चमी**– | उपकृष्णात् | उपकृष्णाभ्याम् | उपकृष्णेभ्यः |
| **षष्ठी**– | उपकृष्णम् | उपकृष्णम् | उपकृष्णम् |
| **सप्तमी**– | उपकृष्णम्/उपकृष्णे | उपकृष्णम्/उपकृष्णयोः | उपकृष्णम्/उपकृष्णेषु |

**(समृद्धि अर्थमा) सुमद्रम् (मद्रदेशको ऐश्वर्य)**– मद्राणां समृद्धिः यस विग्रहमा 'मद्र+आम्+सु' यस्तो स्थितिमा "अव्ययं विभक्ति०"ले समृद्धि अर्थमा वर्तमान अव्यय 'सु'को 'मद्र+आम्'का साथ समास भयो, सुको पूर्वप्रयोग भयो, विभक्तिको लोप भयो, 'सुमद्र'शब्द बन्यो। सुमद्र शब्द अव्यय संज्ञक र नपुंसकलिङ्गी भयो, सु आयो, "नाव्ययीभावाद्०"ले सुका स्थानमा अम् भयो, 'सुमद्रम्' सिद्ध भयो।

**(व्यृद्धि अर्थमा) दुर्यवनम् (मुसलमानहरुको सत्यानाश)**– यवनानां व्यृद्धिः यो लौकिक विग्रहमा 'यवन+आम्+दुर्' यस्तो स्थितिमा "अव्ययं विभक्ति०"ले व्यृद्धि अर्थमा वर्तमान अव्यय 'दुर्'को 'यवन+आम्'सँग समास भयो, दुर्लाई उपसर्जनसंज्ञा, पूर्वप्रयोग भयो, 'दुर्यवन' शब्द बन्यो। दुर्यवन शब्द अव्ययसंज्ञक र नपुंसकलिङ्गी भयो। त्यसदेखि सु आयो, अम् भयो, 'दुर्यवनम्' सिद्ध भयो।

**(अभाव अर्थमा) निर्मक्षिकम् (एकान्तस्थल)**– मक्षिकाणाम् अभावः यस विग्रहमा 'मक्षिका+आम्+निर्' यस्तो स्थितिमा अभाव अर्थमा वर्तमान 'निर्'अव्ययको 'मक्षिका+आम्' यस सुबन्तसँग समास भयो। निर् यसलाई उपसर्जनसंज्ञा, पूर्वप्रयोग, विभक्तिलुक् भएर, 'निर्मक्षिका' भयो। निर्मक्षिका यो अव्यय र नपुंसकलिङ्ग भएर "ह्रस्वो नपुंसके"ले ह्रस्व भयो, 'निर्मक्षिक' शब्द बन्यो, सु आयो, अम् भयो, 'निर्मक्षिकम्' सिद्ध भयो।

**(अत्यय अर्थमा) अतिहिमम् (हिउँको नाश)**– हिमस्य अत्ययः यस विग्रहमा 'हिम+ङस्+अति' यो स्थितिमा नाश अर्थमा वर्तमान अव्यय 'अति'सँग षष्ठचन्त 'हिम+ङस्'को समास भयो, पूर्ववत् 'अतिहिमम्' रूप सिद्ध भयो।

**(असंप्रति अर्थमा) अतिनिद्रम्**– निद्रा संप्रति न युज्यते (यस समयमा निद्रा उचित छैन) यस विग्रहमा 'निद्रा+सु+अति' यस्तो स्थितिमा संप्रति अर्थमा वर्तमान अव्यय 'अति'शब्दको 'निद्रा+सु'

हरिशब्दस्य प्रकाश इतिहरि । विष्णोः पश्चादनुविष्णु । योग्यतावीप्सापदार्थानतिवृत्ति-सादृश्यानि यथार्थाः । रूपस्य योग्यमनुरूपम् । अर्थमर्थं प्रति प्रत्यर्थम् । शक्तिमनतिक्रम्य यथाशक्ति ॥

**९१०. अव्ययीभावे चाकाले ६।३।८१॥**

सहस्य सः स्यादव्ययीभावे न तु काले । हरेः सादृश्यं सहरि । ज्येष्ठस्यानुपूर्व्येणेत्यनुज्येष्ठम् । चक्रेण युगपत् सचक्रम् ।

---

सँग समास भयो । 'अति'को पूर्वप्रयोग भयो, 'अतिनिद्रा' भयो, "अव्ययीभावश्च"ले नपुंसक लिङ्ग भयो "ह्रस्वो नपुंसके०"ले ह्रस्व भयो, पूर्ववत् 'अतिनिद्रम्' रूप सिद्ध भयो ।

**(शब्दप्रादुर्भाव अर्थमा) इतिहरि**– हरि शब्दस्य प्रकाशः (हरिशब्दको प्रकाश) यस विग्रहमा 'हरि+ङस्+इति' यहाँ प्रकाश अर्थमा वर्तमान 'इति'शब्दको 'हरि+ङस्'का साथ समास भयो, इतिको पूर्वप्रयोग विभक्ति लुक् आदि पूर्ववत् भयो, 'इतिहरि' सिद्ध भयो ।

**(पश्चात् अर्थमा) अनुविष्णु**– विष्णोः पश्चात् (विष्णुका पछाडि) यस विग्रहमा 'विष्णु+ङस्+अनु' यहाँ पश्चात अर्थमा वर्तमान 'अनु'शब्दको सुवन्त 'विष्णु+ङस्'का साथ समास भयो, अनुको पूर्वप्रयोग आदि कार्य पूर्ववत् भयो 'अनुविष्णु' सिद्ध भयो ।

**योग्यतेति**– योग्यता, वीप्सा, पदार्थानतिवृत्ति, सादृश्य, यी चार यथा शब्दका अर्थ हुन् । योग्यता भनेको 'योग्य हुनु' हो । वीप्सा भन्नाले 'हरेक या प्रत्येक' भन्ने अर्थ बुझाउँछ । पदार्थानतिवृत्ति भनेको 'पदार्थलाई अतिक्रमण नगर्नु' हो । सादृश्य भनेको 'तुल्य हुनु' हो । क्रमशः उदाहरण प्रस्तुत गरिन्छ ।

**(योग्यता अर्थमा) अनुरूपम्**– रूपस्य योग्यम् (रूपको योग्य) यस विग्रहमा 'रूप+ङस्+अनु' यहाँ योग्यता अर्थमा वर्तमान 'अनु'शब्दको 'रूप+ङस्' सुबन्तका साथ समास भयो, अनुको पूर्वप्रयोग आदि कार्य पूर्ववत् भयो, 'अनुरूपम' सिद्ध भयो ।

**(वीप्सा अर्थमा) प्रत्यर्थम्**– अर्थम् अर्थम् प्रति (अर्थै पिच्छे) यस विग्रहमा 'अर्थ+अम्+प्रति' यहाँ वीप्सा अर्थमा वर्तमान 'प्रति'अव्ययको 'अर्थ+अम्' यस सुबन्तको साथ समास भयो, पूर्ववत् प्रतिको पूर्वप्रयोग आदि कार्य भयो, 'प्रत्यर्थम्' सिद्ध भयो ।

**(पदार्थानतिवृत्ति अर्थमा) यथाशक्ति**– शक्तिम् अनतिक्रम्य (शक्तिलाई अतिक्रमण नगरीकन, शक्ति अनुसार) यस विग्रहमा 'शक्ति+अम्+यथा' यहाँ, पदार्थानतिवृत्ति अर्थमा रहेको अव्यय 'यथा'शब्दको 'शक्ति+अम्' सुवन्त समर्थका साथ समास भयो र यथाको पूर्वप्रयोग भयो, पूर्ववत् 'यथाशक्ति' सिद्ध भयो ।

**अव्ययीभाव इति**– सह शब्दका स्थानमा सआदेश होस् अव्ययीभावसमासमा, कालअर्थ बुझिँदामा त नहोस् ।

**(सादृश्य अर्थमा) सहरि**– हरेः सादृश्यम् (हरिको तुल्य) यस विग्रहमा 'हरि+ टा+सह' यहाँ सादृश्य अर्थमा वर्तमान 'सह'अव्ययको 'हरि+टा'का साथ समास सह शब्दको पूर्वप्रयोग भयो, विभक्तिको लुक् भयो, सहहरि भयो, सहका स्थानमा "अव्ययीभावे चाकाले"ले स आदेश भयो, 'सहरि' सिद्ध भयो ।

**(आनुपूर्व्य अर्थमा) अनुज्येष्ठम्**– ज्येष्ठस्य आनुपूर्व्येण (जेठाका क्रमले) यस विग्रहमा 'ज्येष्ठ+ङस्+अनु' यहाँ आनुपूर्व्य अर्थमा वर्तमान 'अनु'शब्दको 'ज्येष्ठ+ङस्'का साथ समास भयो, पूर्ववत् कार्य भयो, 'अनुज्येष्ठम्' सिद्ध भयो ।

**(यौगपद्यअर्थमा) सचक्रम्**– चक्रेण युगपत् (चक्रले एकैपटक) यस विग्रहमा 'चक्र+टा+सह'

सदृशः सख्या ससखि । क्षत्राणां संपत्तिः सक्षत्रम् । तृणमप्यपरित्यज्य सतृणमत्ति । अग्निग्रन्थपर्यन्तमधीते साग्नि ॥

९११. **नदीभिश्च २।१।२०॥**

नदीभिः सह संख्या समस्यते । **वा.**(समाहारे चायमिष्यते) । पञ्चगङ्गम् । द्वियमुनम् ॥

---

यहाँ यौगपद्य अर्थमा वर्तमान 'सह'शब्दको 'चक्र+टा'सँग समास, सह शब्दको पूर्वप्रयोग विभक्तिलुक् सहका स्थानमा स आदेश भयो, सु आयो, 'सचक्रम्' सिद्ध भयो ।

**(सादृश्य अर्थमा) ससखि-** सदृशः सख्या (सँगीले तुल्य) यस विग्रहमा 'सखि+टा+सह' यहाँ सह शब्दको 'सखि+टा'सँग समास भयो, टाको लुक् भयो, सह शब्दको पूर्वप्रयोग, "अव्ययीभावे चाकाले"ले सहका स्थानमा स आदेश आदि भयो, 'ससखि' सिद्ध भयो ।

**(संपत्ति अर्थमा) सक्षत्रम्-** क्षत्राणां संपत्तिः (क्षत्रियहरूको संपत्ति) यस विग्रहमा 'क्षत्र+भिस्+सह' यहाँ संपत्ति अर्थमा वर्तमान 'सह'अव्ययको 'क्षत्र+भिस्' सँग समास, सह शब्दको पूर्वप्रयोग, विभक्तिलुक्, सहका स्थानमा स आदेश भयो, सु आयो, अम् आदेश भयो, 'सक्षत्रम्' सिद्ध भयो ।

**(साकल्य अर्थमा) सतृणम्-** तृणमप्यरित्यज्य (तृणलाई पनि नछोडेर) यस विग्रहमा 'तृण+टा+सह' यहाँ साकल्यअर्थमा वर्तमान 'सह'अव्ययको 'तृण+अम्'का साथ समास सह शब्दको पूर्वप्रयोग आदि कार्य पूर्ववत् भयो, 'सतृणम्' सिद्ध भयो । यसको प्रयोग-सतृणमत्ति (तृणसहित खान्छ ।) केही बाँकी नराखेर सबै खान्छ भन्ने अर्थ हो ।

**(समाप्ति अर्थमा) साग्नि-** अग्निग्रन्थपर्यन्तम् अधीते (अग्निचयन ग्रन्थसम्म पढ्छ) यस विग्रहमा 'अग्नि+टा+सह' यहाँ समाप्ति अर्थमा वर्तमान 'सह'अव्ययको 'अग्नि+टा'सँग समास, सहको पूर्वप्रयोग आदि पूर्ववत् भयो, 'साग्नि' सिद्ध भयो । यसको प्रयोग- साग्नि अधीते (अग्निचयनग्रन्थसम्म पढ्दछ) ।

**नदीभिरिति-** नदीवाचक शब्दप्रकृतिक सुबन्तसंग संख्यावाचक शब्दप्रकृतिक सुबन्त समर्थको समास गरिन्छ ।

**(वा.)समाहारे चेति-**यो समास समाहार अर्थमा नै इष्ट छ । यहाँ चकार एव अर्थमा छ ।

**पञ्चगङ्गम्-** पञ्चानां गङ्गानां समाहारः (पाँच गङ्गाको समाहार) यस विग्रहमा 'पञ्चन्+जस्+गङ्गा+जस्' यहाँ 'पञ्चन्+जस्' यो संख्यावाचक शब्दप्रकृतिक सुबन्त समर्थको नदीवाचक शब्दप्रकृतिक सुबन्तसमर्थ 'गङ्गा+जस्'सँग "नदीभिश्च"ले समास भयो, समासविधायक शास्त्रमा "सङ्ख्या" यो प्रथमान्तपदले निर्देश गरिएकोले पञ्चन्शब्दलाई उपसर्जन संज्ञा, पूर्वप्रयोग भयो, विभक्तिको लुक् भयो, 'पञ्चन्+गङ्गा' यहाँ नकारको "नलोपः प्रातिपदिकान्तस्य"ले लोप भयो, 'पञ्चगङ्गा' भयो, "ह्रस्वो नपुंसके०)"ले गङ्गाका आकारको ह्रस्व भएर 'पञ्चगङ्ग' शब्द बन्यो सु आयो " नाव्ययीभावात्०"ले सुका स्थानमा अम् भयो, पूर्वरूप भयो, 'पञ्चगङ्गम' सिद्ध भयो । यस शब्दका रूप उपकृष्ण शब्दका जस्तै हुन्छन् ।

**द्वियमुनम्-** द्वयोर्यमुनयोः समाहारः यस विग्रहमा 'द्वि+औ+यमुना+औ' यहाँ नदी शब्द प्रकृतिक सुबन्त समर्थ 'यमुना+औ'सँग सङ्ख्यावाचक शब्द 'द्वि+औ'को समास पञ्चन् शब्दको पूर्व प्रयोग विभक्तिलुक् आदि पूर्ववत् भयो, 'द्वियमुनम्' सिद्ध भयो ।

समास गर्दा अलौकिक विग्रहको स्थितिमा जसरी राखे पनि कुन शब्दको पूर्वप्रयोग गर्ने भन्ने कुरामा उपसर्जनसंज्ञा कसलाई हुन्छ त्यो स्मरण गर्नू पर्छ । समासविधायक सूत्रमा प्रथमान्तनिर्दिष्ट पद उपसर्जन हुन्छ । "नदीभिश्च" यस सूत्रमा सङ्ख्यावाचक शब्दलाई 'सङ्ख्या' यो प्रथमान्तपदले निर्देश गरिएकोले सङ्ख्यावाचक शब्द उपसर्जनसंज्ञक हुन्छ ।

**९१२. तद्धिताः ४।१।७६॥**

आपञ्चमसमाप्तेरधिकारोऽयम् ॥

**९१३. अव्ययीभावे शरत्प्रभृतिभ्यः ५।४।१०७॥**

शरदादिभ्यष्टच् स्यात्समासान्तोऽव्ययीभावे । शरदः समीपमुपशरदम् । प्रतिविपाशम् । **वा.**(जराया जरश्च) । उपजरसमित्यादि ॥

**९१४. अनश्च ५।४।१०८॥**

अन्नन्तादव्ययीभावाट्टच् स्यात् ॥

**९१५. नस्तद्धिते ६।४।१४४॥**

नान्तस्य भस्य टेर्लोपस्तद्धिते । उपराजम् । अध्यात्मम् ॥

---

**तद्धिता इति**– पाँचौ अध्यायको समाप्तिसम्म 'तद्धिताः' यो शब्दको अधिकार जान्छ । यो ४-१-७६ सूत्र हो । यहाँदेखि पाँचौ अध्यायको समाप्तिसम्म विभिन्न सूत्रले विभिन्न प्रत्यय जो-जो विधान गरिन्छन् । ती सबै तद्धितसंज्ञक हुन्छन् र तद्धितान्त शब्दलाई "कृत्तद्धितसमासाश्च"ले प्रातिपदिकसंज्ञा हुन्छ ।

**अव्ययीभाव इति**– शरदादिगणपठित शब्ददेखि समासान्त टच् प्रत्यय होस् अव्ययीभाव समासमा ।

**उपशरदम्**– शरदः समीपम्, यस विग्रहमा 'शरद्+ङस्+उप' यहाँ समीप अर्थबोधक 'उप'अव्ययको 'शरद्+ङस्'का साथ "अव्ययं विभक्ति०"ले समास, 'उप'को पूर्वप्रयोग विभक्तिलुक् भएर 'उपशरद्' भयो, यहाँ शरद् शब्द शरदादिगण पठित छ र "अव्ययीभावे०"ले समासान्त टच् प्रत्यय भयो, टकार र चकारको अनुबन्धलोप भयो, 'उपशरद'शब्द बन्यो, तद्धितान्तत्वात् सु आयो, पूर्ववत् 'उपशरदम्' सिद्ध भयो । यसका रूप 'उपकृष्ण'शब्दका जस्तै हुन्छन् ।

**प्रतिविपाशम्**– विपाशः अभिमुखम् (व्यासनदी तर्फ) यस विग्रहमा "लक्षणेनाभिप्रति अभिमुख्ये" यस सूत्रले 'विपाश+ङस्+प्रति' यहाँ समास, विभक्तिलुक्, प्रतिको पूर्वप्रयोग, भएर 'प्रतिविपाश्' भएपछि "अव्ययीभावे०"ले समासान्त टच् प्रत्यय भयो, पूर्ववत् 'प्रतिविपाश'शब्द बन्यो । सु आयो, प्रतिविपाशम् भयो । यसका रूप उपकृष्ण शब्दका जस्तै हुन्छन् ।

**(ग.सू.) जराया इति**– समासमा जरा शब्दका स्थानमा जरस् आदेश होस्, टच् प्रत्यय पनि होस् । यो शरदादिगण भित्रको गणसूत्र हो ।

**उपजरसम्**– जरायाः समीपम् (बुढेसको नजिक) यस विग्रहमा 'जरा+ङस्+उप' यहाँ "अव्ययं विभक्ति०"ले समास, 'उप'अव्ययको पूर्वप्रयोग, विभक्तिलुक् भएपछि 'उपजरा'शब्द भयो, "जराया जरस् च" यो गणसूत्रले जराका स्थानमा जरस् आदेश र टच् प्रत्यय भयो र 'उपजरस' प्रातिपदिक बन्यो । सु आयो, 'उपजरसम्' सिद्ध भयो । यसका रूप पनि उपकृष्ण शब्दका जस्तै हुन्छन् ।

शरदादिगणमा कति शब्द छन्, त्यो गणपाठ हेरेर तदनुसार रूपसिद्धि गर्नु पर्छ ।

**अनश्चेति**– अन् अन्तमा हुने अव्ययीभावसमासदेखि समासान्त टच् प्रत्यय होस् ।

**नश्चेति**– नकारान्त भसंज्ञक अङ्गका टिको लोप होस्, तद्धित प्रत्यय पर भएमा ।

**उपराजम्**– राज्ञः समीपम् (राजाका नजीक) यस विग्रहमा 'राजन+ङस्+उप' यहाँ "अव्ययं विभक्ति०"ले समास भयो, 'उप'को पूर्वप्रयोग भयो, 'उपराजन्' भयो, 'उपराजन्' यो अन्नन्त अव्ययीभावसमास हुनाले "अनश्च"ले टच् प्रत्यय भयो, "नस्तद्धिते"ले टिलोप भयो, 'उपराज' भयो, यसलाई प्रातिपदिकसंज्ञा भयो, सु आयो 'उपराजम्' सिद्ध भयो ।

**अध्यात्मम्**– आत्मनि इति (आफूमा) यस विग्रहमा 'आत्मन्+ङि+अधि' यहाँ सप्तमी

---

**९१६. नपुंसकादन्यतरस्याम् ५।४।१०९॥**

अन्नन्तं यत् क्लीबं तदन्तादव्ययीभावाट्टज्वा स्यात्। उपचर्मम्। उपचर्म॥

**९१७. झयः ५।४।१११॥**

झयन्तादव्ययीभावाट्टज्वा स्यात्। उपसमिधम्। उपसमित्॥

**इत्यव्ययीभावसमासः ॥२॥**

---

विभक्ति (ङि)को अर्थमा वर्तमान अधिको 'आत्मन्+ङि'का साथ समास अधिको पूर्वप्रयोग, यण् भएर 'अध्यात्मन्' भएपछि अन्नन्त अव्ययीभावसमास हुनाले पूर्ववत् "अनश्च"ले टच् प्रत्यय टिलोप भयो र अकारान्त 'अध्यात्म'शब्द बन्यो, प्रातिपदिकसंज्ञा भयो, सु आयो, 'अध्यात्मम्' सिद्ध भयो।

**नपुंसकादिति-** अन् अन्तमा हुने जो नपुंसक लिङ्गमा वर्तमान प्रातिपदिक छ, तदन्त अव्ययीभावसमासदेखि विकल्पले टच् प्रत्यय होस्।

**उपचर्मम्/उपचर्म-** चर्मणः समीपम् (छालाको नजिकमा) यस विग्रहमा 'चर्मन्+ङस्+उप' यहाँ समास, उपको पूर्वप्रयोग भयो, 'उपचर्मन्' भयो, चर्मन् यो नपुंसकलिङ्गमा वर्तमान प्रातिपदिक छ र तदन्त अव्ययीभाव उपचर्मन् शब्ददेखि "नपुंसकादन्य०"ले वैकल्पिक टच् प्रत्यय, टिलोप भयो, 'उपचर्म'शब्द बन्यो, सु आयो, 'उपचर्मम्' सिद्ध भयो। टच् प्रत्यय नभएका पक्षमा 'उपचर्मन्' यो नकारान्त शब्द नै रह्यो, सु आयो "अव्ययादाप्सुपः"ले लुक् भयो, "नलोपः प्रातिपदिकान्तस्य"ले नकारको लोप भयो, 'उपचर्म' सिद्ध भयो। 'उपचर्मन्'शब्दका रूप सबै विभक्ति र वचनमा एउटै हुन्छन्। अकारान्त नहुनाले "नाव्ययीभावात्०" "तृतीया सप्तम्योः०" यी सूत्र लाग्दैनन्।

**झय इति-** झय्प्रत्याहार अन्तमा हुने अव्ययीभावसमासदेखि विकल्पले टच् प्रत्यय होस्।

**उपसमिधम्/उपसमित्-** समिधः समीपम् (दाउराको नजिक) यस विग्रहमा 'समिध्+ङस्+उप' यहाँ "अव्ययं विभक्ति०"ले समास, विभक्तिलुक् भएर 'उपसमिध्' भएपछि "झयः"ले टच् प्रत्यय भयो, 'उपसमिध' अकारान्त प्रातिपदिक भयो र सु आयो, पूर्ववत् 'उपसमिधम्' सिद्ध भयो। टच् प्रत्यय नभएमा धकारान्त 'उपसमिध्' शब्द भयो, सु आयो, लुक् भयो, जश्त्व, चर्त्व भयो, 'उपसमित्' सिद्ध भयो। अकारान्त 'उपसमिध'शब्दमा "नाव्ययीभावात्०" आदि सूत्रको प्रवृत्ति हुन्छ। 'उपसमिध्'शब्दमा सुप्को लुक् हुने हुनाले सबै विभक्ति र वचनमा एकै रूप हुन्छन्।

**अव्ययीभाव समास सकियो।**

-------------------

## अथ तत्पुरुषसमासः

**९१८. तत्पुरुषः २।१।२२॥**

अधिकारोऽयं प्राग्बहुव्रीहेः ॥

**९१९. द्विगुश्च २ । १ । २३ ॥**

द्विगुरपि तत्पुरुषसंज्ञकः स्यात् ॥

**९२०. द्वितीया श्रितातीतपतितगतात्यस्तप्राप्तापन्नैः २।१।२४॥**

द्वितीयान्तं श्रितादिप्रकृतिकैः सुबन्तैः सह वा समस्यते स च तत्पुरुषः । कृष्णं श्रितः कृष्णश्रित इत्यादि ॥

---

### अब तत्पुरुष समास शुरु गरिन्छ ।

**तत्पुरुष इति**– बहुवीहिसमासदेखि पूर्वसम्म अर्थात् "शेषो बहुव्रीहिः"२।२।२३ सूत्रदेखि पूर्वसम्म "तत्पुरुषः" यो सूत्रको अधिकार गरिन्छ । त्यहाँ सम्मका सूत्रहरूले गरिने समासलाई तत्पुरुष संज्ञा हुन्छ भन्ने यसको अभिप्राय हो ।

**द्विगुश्चेति**– द्विगुसमास पनि तत्पुरुषसंज्ञक होस् ।

केही संझन योग्य कुराहरूः– तत्पुरुषसमासमा दुई पद हुन्छन् । पूर्वपद प्रायः प्रथमान्त बाहेक द्वितीयान्त, तृतीयान्त आदि अन्यविभक्त्यन्त हुन्छ । समास गर्ने अवस्थामा प्रायः उत्तरपद प्रथमान्त नै राखिन्छ । समास भैसकेपछि अन्वयानुसार विभिन्न विभक्ति राख्ने प्रचलन छ, यसमा प्रायः उत्तरपदार्थ नै प्रधान रहन्छ । अब क्रमशः द्वितीयान्त, तृतीयान्त आदि पदहरूको सूत्रनिर्देशन सहित समास प्रक्रिया बताइन्छ ।

**द्वितीयेति**– द्वितीयान्तसमर्थको श्रित आदि प्रकृतिक सुबन्तसमर्थले संग समास होस् त्यो तत्पुरुषसंज्ञक पनि होस् ।

**कृष्णश्रितः**– कृष्णं श्रितः (कृष्णलाई आश्रय गरेको) यो विग्रहमा 'कृष्ण+अम्+श्रित+सु' यहाँ द्वितीयान्तसमर्थ 'कृष्ण+अम्' यसको श्रितप्रकृतिक सुबन्तसमर्थ 'श्रित+सु'का साथ समास भयो, "प्रथमानिर्दिष्टं समास०"ले 'कृष्ण+अम्'को उपसर्जनसंज्ञा, "उपसर्जन पूर्वम्"ले पूर्वप्रयोग भयो, विभक्तिको लुक् भयो, 'कृष्णश्रित' शब्द बन्यो, समासत्वात् प्रातिपदिकसंज्ञा भयो, सु आयो, 'कृष्णश्रितः' सिद्ध भयो । औमा-'कृष्णश्रितौ', जस्मा-'कृष्णश्रिताः' हुन्छ, यस्तै अरू विभक्तिमा अर्थात् श्रितेन श्रिताय इत्यादि स्थलमा पनि ऊह गर्नु किन कि यहाँ श्रितादि प्रकृतिक सुबन्त समर्थ भनिएको छ र श्रितादि शब्दबाट तृतीयाआदि विभक्ति पनि आउँछन् । यस्तै प्रकारले-लोकातीतः । नरकपतितः[१३३] । ग्रामगतः । तुहिनात्यस्तः[१३४] । सुखप्राप्तः । दुःखापन्नः । यी शब्दहरू सिद्ध हुन्छन् ।

---

१३३ पत्लृ गतौ यस धातुमा "यस्य विभाषा"ले इट् आगमको निषेध हुन्छ । 'पतितः' यो चुरादिका पतगतौ धातुको रूप हो ।

१३४ 'अत्यस्तः' यो अति शब्द पूर्वमा हुने असु क्षेपणे धातुदेखि कर्तामा क्त प्रत्यय भएको रूप हो ।

**९२१. तृतीया तत्कृतार्थेन गुणवचनेन २।१।३०॥**

तृतीयान्तं तृतीयान्तार्थकृतगुणवचनेनार्थेन च सह वा प्राग्वत्। शङ्कुलया खण्डः शङ्कुलाखण्डः। धान्येनार्थो धान्यार्थः। तत्कृतेति किम्? अक्ष्णा काणः॥

**९२२. कर्तृकरणे कृता बहुलम् २।१।३२॥**

कर्तरि करणे च तृतीया कृदन्तेन बहुलं प्राग्वत्। हरिणा त्रातो हरित्रातः। नखैर्भिन्नो नखभिन्नः। (प.) कृद्ग्रहणे गतिकारकपूर्वस्यापि ग्रहणम्। नखनिर्भिन्नः।

**९२३. चतुर्थी तदर्थार्थबलिहितसुखरक्षितैः २।१।३६॥**

चतुर्थ्यन्तार्थाय यत् तद्वाचिना अर्थादिभिश्च चतुर्थ्यन्तं वा प्राग्वत्।

---

**तृतीयेति**– तृतीयान्तसमर्थको तृतीयान्तका अर्थले गराइएको गुणवाचक शब्दप्रकृतिक सुबन्तसमर्थका साथ विकल्पले समास होस्, त्यो तत्पुरुषसंज्ञक होस्।

**शङ्कुलाखण्डः**:- शङ्कुलया खण्डः (सरौताले टुक्रा गरिएको) यस लौकिक विग्रहमा 'शङ्कुला+टा+खण्ड+सु' यहाँ "तृतीया तत्कृतार्थेन०"ले समास भयो, समासविधायक शास्त्रमा 'तृतीया' यो प्रथमान्तपदले निर्दिष्ट 'शङ्कुला+टा' छ, त्यसको उपसर्जनसंज्ञा र पूर्वप्रयोग भयो, विभक्तिको लुक् भयो, 'शङ्कुलाखण्ड'शब्द बन्यो, सु आयो, 'शङ्कुलाखण्डः' सिद्ध भयो।

**धान्यार्थः**:- धान्येन अर्थः (धानले धन) यो लौकिक विग्रहमा 'धान्य+टा+अर्थ+सु' यहाँ पूर्वसूत्रले समास 'धान्य+टा'लाई उपसर्जनसंज्ञा, पूर्वप्रयोग, विभक्तिलुक्, दीर्घ भयो, 'धान्यार्थ' शब्द बन्यो, त्यसदेखि सु आयो, 'धान्यार्थः' सिद्ध भयो।

**तत्कृतेति किमिति**– तत्कृतेतिकिम्? "तृतीया तत्कृतार्थेन०" यस सूत्रमा तृतीयान्तका अर्थले गराइएको किन भन्नु? न भन्ने हो भने 'अक्ष्णा+काणः' यहाँ पनि समास होला र 'अक्षिकाणः' यस्तो अनिष्ट रूप सिद्ध होला, सो नहोस् भनेर हामीले सूत्रमा तत्कृत अर्थात् तृतीयान्तका अर्थले गराइएको भन्यौं, यहाँ तृतीयान्तको अर्थ आँखाले गराइएको कानो (काणः) होइन र समास भएन 'अक्ष्णा काणः' यस्तै रह्यो। यहाँ जसरी सरौताले सुपारी दुई टुक्रा गऱ्यो, त्यस्तै आँखाले त्यो व्यक्तिलाई कानो बनाउने काम गरेको छैन। आँखो फुटाउने काम अरू कुनै पदार्थबाट भएको छ।

**कर्तृकरण इति**– कर्तामा अथवा करणमा विधान गरिएको जो तृतीया छ, तदन्तसमर्थको कृदन्तसमर्थका साथ बहुलतया समास गरिन्छ।

**हरित्रातः**:- हरिणा त्रातः (हरिले रक्षा गरिएको) यस विग्रहमा 'हरि+टा+त्रात+सु' यहाँ "कर्तृकरणे कृता बहुलम्" यो सूत्रले 'हरि+टा'को 'त्रात+सु'सँग समास 'हरि+टा'को पूर्वप्रयोग, विभक्तिलुक् भयो, 'हरित्रात' भयो, त्यसदेखि सु आयो, 'हरित्रातः' सिद्ध भयो।

**नखभिन्नः**:- नखैर्भिन्नः (नङ्ले चिरिएको) यस विग्रहमा 'नख+भिस्+भिन्न+सु' यहाँ "कर्तृकरणे०"ले समास भयो, 'नख+भिस्'को पूर्वप्रयोग, विभक्तिको लुक् भयो, 'नखभिन्न'शब्द बन्यो, त्यसदेखि सु आयो, 'नखभिन्नः' सिद्ध भयो।

**(वा.) कृद्ग्रहण इति**– कृदन्तको ग्रहणमा गति र कारक पूर्वपद भएका को पनि ग्रहण होस्।

**नखनिर्भिन्नः**:-नखैर्निर्भिन्नः (नङ्ले चिरिएको) यस विग्रहमा 'नख+टा+निर्भिन्न+सु' यहाँ "कर्तृकरणे०"ले केवल कृदन्तसमर्थ भनेको छ, यहाँ निर् शब्द पूर्वमा छ र समास पाएन। अतः "कृद्ग्रहणे०" यस वार्तिकले कृदन्तका ग्रहणमा गति र कारकपूर्वमा हुनेको पनि ग्रहण हुन्छ भनेकोले 'निर्भिन्न'पनि कृदन्त नै मानियो र समास भयो, 'नखनिर्भिन्न'शब्द बन्यो। सु आयो, 'नखनिर्भिन्नः' सिद्ध भयो।

**चतुर्थीति**– चतुर्थ्यन्तको अर्थका निमित्त जो छ, तद्वाचक सुबन्तसमर्थ र अर्थ, बलि, हित,

यूपाय दारु यूपदारु । **वा.**(तदर्थेन प्रकृतिविकृतिभाव एवेष्टः) । तेनेह न,रन्धनाय स्थाली । **वा.**(अर्थेन नित्यसमासो विशेष्यलिङ्गता चेति वक्तव्यम्) । द्विजार्थः सूपः । द्विजार्था यवागूः । द्विजार्थं पयः । भूतबलिः । गोहितम् । गोसुखम् । गोरक्षितम् ॥

**९२४. पञ्चमी भयेन २।१।३७।**

चोराद्भयं चोरभयम् ॥

---

सुख, रक्षित शब्द, प्रकृतिक सुबन्तसमर्थले सँग पनि चतुर्थ्यन्तको विकल्पले समास गरिन्छ त्यो तत्पुरुषसंज्ञक हुन्छ ।

**यूपदारु**– यूपाय दारु (मौलाका निमित्त काठ) यस विग्रहमा 'यूप+ङे+दारु+सु' यहाँ चतुर्थ्यन्तयूप( मौला) का निमित्त दारु(काठ) छ र "चतुर्थी तदर्थार्थ०"ले समास भयो, विभक्तिलुक् भयो, 'यूपदारु'शब्द बन्यो, यूपदारु शब्ददेखि सु आयो, नपुंसकत्वात् "स्वमोर्नपुंसकात्"ले लुक् भयो, 'यूपदारु' सिद्ध भयो ।

**(वा.) तदर्थेनेति**– यहाँ तदर्थ भन्नाले प्रकृतिविकृतिभाव इष्ट छ । पूर्वपदार्थ विकृति उत्तरपदार्थ प्रकृति हुनु पर्दछ । जस्तो कि दारु(काठ) बाट यूप(मौलो) बन्दछ । अतः दारु प्रकृति भयो, विकार यूप विकृति भयो र यहाँ प्रकृतिविकृतिभाव भएकोले समास भयो । रन्धनाय स्थाली यहाँ (पकाउनको निमित्त कसौंडी) भन्दा स्थाली(कसौंडी)को विकार रन्धन (पकाउनु) होइन । रन्धन क्रिया हो, स्थाली द्रव्य हो । क्रियाको र द्रव्यको प्रकृतिविकृतिभाव हुँदैन । अतः यहाँ समास भएन वाक्य नै रह्यो ।

**(वा.) अर्थेनेति**– अर्थशब्दका साथ नित्यसमास होस्, विशेष्यका जस्तो लिङ्ग पनि होस् भन्नू ।

**द्विजार्थः सूपः**– द्विजाय अयम् (ब्राह्मणका निमित्त यो) यस लौकिक विग्रहमा 'द्विज+ङे+अर्थ+सु' यस्तो अस्वपद अलौकिक विग्रहमा "अर्थेन नित्यसमासो०" भन्ने वार्तिकको सहकारपूर्वक "चतुर्थी तदर्थार्थ०"ले नित्यसमास, विभिक्तिलुक् आदि भयो, 'द्विजार्थ' शब्द बन्यो । वार्तिकले विशेष्यको जस्तो लिङ्ग होस् भनेकोले 'सूपः' यो पुंलिङ्ग विशेष्य भएकोले द्विजार्थ शब्द पुंलिङ्ग भयो, सु आयो, 'द्विजार्थः सूपः' सिद्ध भयो । अस्वपदविग्रह भएको नित्य समास हुन्छ भनेको हुनाले यो नित्य समास हो । किनकि लौकिक विग्रहमा अयम् शब्द छ, अलौकिक विग्रहमा अर्थ शब्द छ । अतः यो अस्वपदविग्रह समास हो । लौकिक विग्रहमा राखिएका अयम्, इयम्, इदम् आदि अन्यपद यसका विशेष्य हुन्छन् ।

**द्विजार्था यवागूः**– (ब्राहमणका निमित्त हलुवा) यहाँ द्विजाय इयम् यो लौकिक विग्रह र 'द्विज+ङे+अर्थ+सु' यो अलौकिक विग्रहमा समास भएर विशेष्यको लिङ्ग अनुसार स्त्रीत्वात् टाप भएर द्विजार्था भयो र 'द्विजार्था यवागूः' सिद्ध भयो ।

**द्विजार्थं पयः**– (ब्राह्मणका निमित्त दूध) यहाँ द्विजाय इदम् यो लौकिक विग्रह र 'द्विज+ङे+अर्थ+सु' अलौकिक विग्रहमा समास भएर विशेष्यको लिङ्ग अनुसार द्विजार्थ शब्दको लिङ्ग भयो र 'द्विजार्थम् पयः' सिद्ध भयो ।

**भूतबलिः**– भूतेभ्यो बलिः (भूतहरूलाई बलि) यस विग्रहमा 'भूत+भ्याम्+बलि+सु' यहाँ "चतुर्थी तदर्थार्थ०"ले समासादि कार्य भयो, 'भूतबलि'शब्द बन्यो, त्यसदेखि सु आयो, 'भूतबलिः' सिद्ध भयो ।

यस्तै प्रकारले 'गोभ्यः सुखम्' (गाईहरूलाई सुख) यो विग्रहमा 'गोसुखम्', गोभ्यो हितम् (गाईलाई हित) यस विग्रहमा 'गोहितम्', गोभ्यो रक्षितम् (गाईहरूका निमित्त राखिएको) यस विग्रहमा 'गोरक्षितम्' यी रूप पनि यसै सूत्रले समास भएर सिद्ध हुन्छन् ।

**पञ्चमीति**– पञ्चम्यन्त समर्थको, भयवाचक शब्दप्रकृतिक सुबन्तसमर्थले सँग समास होस्, त्यो अव्ययीभावसंज्ञक होस् ।

**चोरभयम्**– चोराद् भयम् (चोरदेखि डर) यस विग्रहमा 'चोर+ङसि+भय+सु' यहाँ पञ्चम्यन्त

**९२५. स्तोकान्तिकदूरार्थकृच्छ्राणि क्तेन २।१।३९॥**

**९२६. पञ्चम्याः स्तोकादिभ्यः ६।३।२॥**

अलुगुत्तरपदे । स्तोकान्मुक्तः । अन्तिकादागतः । अभ्याशादागतः । दूरादागतः । कृच्छ्रादागतः ॥

**९२७. षष्ठी २।२।८॥**

सुबन्तेन प्राग्वत् । राजपुरुषः ॥

**९२८. पूर्वापराधरोत्तरमेकदेशिनैकाधिकरणे २।२।१॥**

अवयविना सह पूर्वादयः समस्यन्ते एकत्वसंख्याविशिष्टश्चेदवयवी । षष्ठीसमासापवादः । पूर्वं कायस्य पूर्वकायः । अपरकायः ।

---

समर्थ 'चोर+ङसि'को 'भय+सु'सँग 'पञ्चमी भयेन'ले समास भयो, पूर्ववत् 'चोर भयम्' सिद्ध भयो । यस्तै प्रकारले 'चोरभीतिः' आदि शब्दहरू पनि यही सूत्रले समास भएर बन्दछन् ।

**स्तोकेतिः**– पञ्चम्यन्त स्तोक शब्द अन्तिक शब्द र दूरार्थवाचक शब्द र कृच्छ्र शब्द प्रकृतिक सुबन्तसमर्थ, क्तप्रत्ययान्त सुबन्तसमर्थका साथ समास गरिन्छन्, त्यो समास तत्पुरुष कहिन्छ ।

**पञ्चम्या इति**– स्तोक आदि शब्ददेखि पर रहेको पञ्चमीविभक्तिको लुक् नहोस् उत्तरपद परभएमा । "उत्तरपदं समासचरमावयवे रूढम्", (उत्तरपद शब्द समासको पछिल्लो अवयव अर्थात् पछिल्लो पदमा रूढ छ ।)

**स्तोकान्मुक्तः**– स्तोकात् मुक्तः (थोरैबाट छुटेको) यस विग्रहमा 'स्तोक+ङसि+मुक्त+सु' यहाँ "स्तोकान्तिकदूरार्थ"ले समास भयो, 'स्तोक+ङसि'को उपसर्जन संज्ञा, पूर्वप्रयोग भयो, "सुपो धातु०"ले ङसि र सु दुवै विभक्तिको लुक् पाएकोमा "पञ्चम्याः स्तोकादिभ्यः"ले पञ्चमी ङसिको लुक् निषेध भयो । सुको मात्र लुक् भयो, ङसिको विभक्तिकार्य परसवर्ण भएर 'स्तोकान्मुक्त' शब्द बन्यो, त्यसदेखि सु आयो, 'स्तोकान्मुक्तः' सिद्ध भयो । यस्तै प्रकारले- अन्तिकादागतः । अभ्याशादागतः । कृच्छ्रादागतः । यी शब्दहरू पनि उक्त सूत्रले समास र अलुक् भएर सिद्ध भए । यहाँ अभ्याश शब्द समीपवाचक हो । अलुक् समासमा विभक्तिको लुक् नहुने हुँदा यद्यपि शब्दको संक्षेपीकरण हुँदैन, तर दुवै पदको एकपद बन्दछ र स्वरमा फरक पर्दछ त्यही फल हो ।

**षष्ठीति**– षष्ठ्यन्त समर्थको सुबन्त समर्थकासाथ समास गरिन्छ, त्यो तत्पुरुषसंज्ञक हुन्छ ।

**राजपुरुषः**– राज्ञः पुरुषः (राजाको मानिस) यस विग्रहमा 'राजन्+ ङस्+पुरुष+ सु' यहाँ षष्ठ्यन्त 'राजन्+ङस्'को 'पुरुष+सु'का साथ "षष्ठी" यस सूत्रले समास, विभक्तिलुक् भयो, 'राजपुरुष' शब्द बन्यो, त्यसदेखि सु आयो, 'राजपुरुषः' सिद्ध भयो ।

**पूर्वपरेति**– अवयवी वाचक शब्दप्रकृतिक सुबन्तसमर्थका साथ अवयववाचक पूर्व, अपर, अधर, उत्तर शब्दप्रकृतिक सुबन्तसमर्थ समास गरिन्छन्, अवयवी यदि एकत्वसंख्याविशिष्ट छ भने । यहाँ एकदेश भनेको अवयव हो । एकदेशी भनेको अवयवी हो । यो सूत्र षष्ठीसमासको अपवाद हो । यहाँ "षष्ठी" यो सूत्रले समास गर्ने हो भने षष्ठ्यन्त कायशब्दको पूर्वप्रयोग हुन्छ । किनकि त्यो समासविधायक शास्त्रमा प्रथमानिर्दिष्ट हुन्छ । यो सूत्रले समास गर्दा पूर्वादि शब्द प्रथमानिर्दिष्ट छन् र पूर्वादि शब्दको पूर्वप्रयोग हुन्छ र 'पूर्वकायः', 'अपरकायः' आदि शब्द बन्दछन्, जो अभीष्ट छन् । षष्ठीसमास गर्दा 'कायपूर्व' आदि रूप हुन्छन्, जो अभीष्ट छैनन् । ती रूप नहोउन् भनेर यो सूत्र आरम्भ गरियो ।

**पूर्वकायः, अपरकायः**– कायस्य पूर्वम् (शरीरको पूर्वभाग) यो विग्रहमा 'काय+ङस्+पूर्व+सु' यहाँ अवयवी 'काय+ङस्'का साथ अवयव 'पूर्व+सु'को "पूर्वापराधरोत्तरम्०"ले समास भयो,

एकाधिकरणे किम् ? पूर्वश्छात्राणाम् ॥

**९२९. अर्ध नपुंसकम्** २।२।२॥

समांशवाच्यर्धशब्दो नित्यं क्लीबे, स प्राग्वत् । अर्ध पिप्पल्याः अर्धपिप्पली ॥

**९३०. सप्तमी शौण्डैः** २।१।४०॥

सप्तम्यन्तं शौण्डादिभिः प्राग्वत् । अक्षेषु शौण्डः अक्षशौण्ड इत्यादि । द्वितीयातृतीयेत्यादियोगविभागादन्यत्रापि तृतीयादिविभक्तीनां प्रयोगवशात्समासो ज्ञेयः ॥

---

समास विधायक शास्त्रमा पूर्व शब्द प्रथमा निर्दिष्ट हुनाले 'पूर्व+सु'को पूर्वप्रयोग, विभक्तिलुक् भयो, 'पूर्वकाय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पूर्वकायः' सिद्ध भयो । यस्तै प्रकारले कायस्य अपरः यस विग्रहमा 'काय+ङस्+पूर्व' यहाँ पूर्ववत् समासादि कार्य भयो, 'अपरकायः' सिद्ध भयो ।

**एकाधिकरणे किमिति–** "पूर्वापराधरोत्तरम्०" यस सूत्रमा एकाधिकारणे किन भन्नु ? नभन्ने हो भने छात्राणां पूर्वः (छात्रहरूमा पहिलो) यस विग्रहमा 'छात्र+आम्+पूर्व+सु' यहाँ पनि समास होला, त्यो नहोस् भनेर एकाधिकरणे भनियो, एकाधिकरणे भनेपछि अवयवी एकत्व सङ्ख्यामा विशिष्ट भएमा भन्ने अर्थ भयो । यहाँ अवयवी एकत्वसङ्ख्याविशिष्ट छैन र समास भएन 'छात्राणां पूर्वः' यस्तै वाक्य रह्यो । 'छात्राणां पूर्वः' भन्नु र 'पूर्वश्छात्राणाम्' भन्नु यौटै अर्थ हो । यहाँ छात्रसमूह अवयवी हो ती मध्येको एक छात्र अवयव हो ।

'पूर्वकायः' आदि शब्दमा तत्पुरुषसमास भए पनि उत्तरपदार्थ प्रधान छैन, पूर्वपदार्थ प्रधान छ । त्यसैले तत्पुरुषसमास प्रायः उत्तर पदार्थ प्रधान हुन्छ भनेर आरम्भमै भनिएको छ ।

**अर्धमिति–**नित्य नपुंसकलिङ्गमा रहने बराबर आधा भागलाई कहने अर्ध शब्दप्रकृतिक सुबन्तसमर्थको, अवयवी वाचक शब्दप्रकृतिक सुबन्तसमर्थका साथ समास होस्, त्यो समास तत्पुरुषसंज्ञक होस् ।

**अर्धपिप्पली–** पिप्पल्या अर्धम् (पिप्लाको आधा) यस लौकिक विग्रहमा 'पिप्पली+ङस्+अर्ध+सु', यहाँ बराबर आधाभागवाचक अर्धशब्दप्रकृतिक सुबन्त 'अर्ध+सु'को अवयवीवाचक शब्दप्रकृतिक सुबन्त 'पिप्पली+ङस्'का साथ "अर्ध नपुंसकम्"ले समास भयो, समासविधायक शास्त्रमा 'अर्धम्' यो प्रथमान्त पदले निर्दिष्ट हुनाले 'अर्ध+सु'को पूर्वप्रयोग विभक्तिको लुक् भयो, 'अर्धपिप्पली' शब्द बन्यो, त्यसदेखि सु आयो, "हलङ्याब्भ्यो०"ले लोप भयो, 'अर्धपिप्पली' सिद्ध भयो । यहाँ पनि पूर्वपदार्थ प्रधान छ ।

**सप्तमीति–** सप्तम्यन्त समर्थको शौण्डादिगणपठित शब्दप्रकृतिक सुबन्तसमर्थले सँग समास होस्, त्यो तत्पुरुषसंज्ञक होस् ।

**अक्षशौण्डः**–(जूवामा धूर्त) अक्षेषु शौण्डः यस विग्रहमा 'अक्ष+सु+शौण्ड+सु' यहाँ "सप्तमी शौण्डैः"ले समास भयो, 'सप्तमी' यो प्रथमान्तपदले निर्दिष्ट हुनाले 'अक्ष+सु'को पूर्वप्रयोग, विभक्तिको लुक् भयो, सु आयो, 'अक्षशौण्डः' सिद्ध भयो ।

**इत्यादीति–** यी आदि भन्नाले शौण्डादि गण हेरेर अक्षधूर्त, अक्षकितव आदि शब्द सिद्ध गर्नु भन्ने बुझिन्छ ।

**द्वितीयातृतीयेति–** "द्वितीया श्रितातीत०", "तृतीया तत्कृतार्थेन०", "चतुर्थी तदर्थार्थ०" इत्यादि सूत्रमा द्वितीया, तृतीया आदि योग विभाग गरेको हुनाले अन्यत्र पनि प्रयोग हेरेर समास हुन्छ भन्ने जान्नू । योगविभाग गरेपछि द्वितीयान्तको केवल श्रितादि शब्दसँग नभएर अरू सुबन्तसँग पनि र तृतीयान्तको तृतीयान्तार्थकृत गुणवाचकशब्दसँग मात्र नभएर अरू सँग पनि, यस्तैप्रकारले चतुर्थ्यन्त, पञ्चम्यन्तको पनि बताए बाहेक अरू सुबन्तसँग पनि समास हुन्छ भन्ने कुरा प्रयोगहरू देखेर नै जानिन्छ ।

---

**९३१. दिक्संख्ये संज्ञायाम् २।१।५०॥**

संज्ञायामेवेति नियमार्थं सूत्रम् । पूर्वेषुकामशमी । सप्तर्षयः ।
तेनेह न, उत्तरा वृक्षाः । पञ्च ब्राह्मणाः ॥

**९३२. तद्धितार्थोत्तरपदसमाहारे च २।१।५१॥**

तद्धितार्थे विषये, उत्तरपदे च परतः, समाहारे च वाच्ये, दिक्संख्ये प्राग्वत् । पूर्वस्यां शालायां भवः पूर्वा शाला इति समासे जाते- **वा.** (सर्वनाम्नो वृत्तिमात्रे पुंवद्भावः) ॥

**९३३. दिक्पूर्वपदादसंज्ञायां ञः ४।२।१०७॥**

अस्माद्भवाद्यर्थे ञः स्यादसंज्ञायाम् ॥

---

**दिक्संख्ये इति**– दिशावाचक र सङ्ख्यावाचक शब्दप्रकृतिक सुबन्त समर्थको सुबन्त समर्थका साथ समास गरिन्छ, संज्ञा बुझिएमा ।

**पूर्वेषुकामशमी**– पूर्वा चासौ इषुकामशमी ( पूर्व तर्फको इषुकामशमी गाउँ) यस विग्रहमा 'पूर्व+सु+इषुकामशमी+सु', यहाँ "दिक्सङ्ख्ये०"ले दिग्वाचक शब्द हुनाले र संज्ञा बुझिने हुनाले समास भयो, समासविधायक शास्त्रमा 'दिक्सङ्ख्ये' यो प्रथमान्तपदले निर्दिष्ट हुनाले 'पूर्व+सु' को पूर्वप्रयोग, विभक्तिलुक् भयो, 'पूर्वेषुकामशमी' शब्द बन्यो, त्यसदेखि सु आयो, "हल्ङ्याब्भ्यो०"ले लोप भयो, 'पूर्वेषुकामशमी' सिद्ध भयो ।

**सप्तर्षयः**– (सप्तर्षिहरू) सप्त च ते ऋषयः यो विग्रहमा 'सप्तन्+जस्+ऋषि+जस्', यहाँ "दिक्सङ्ख्ये०"ले सङ्ख्यावाचक शब्द हुनाले र संज्ञा बुझिएकोले 'सप्तन्+जस्+ऋषि+जस्'को समास भयो, प्रथमान्तपदनिर्दिष्ट 'सप्तन्+जस्'को पूर्वप्रयोग, विभक्तिलुक् भयो, बहुत्वात् जस् आयो, 'सप्तर्षयः' सिद्ध भयो ।

**संज्ञायामेवेति**– संज्ञामा मात्र हुन्छ भन्ने नियमका निमित्त सूत्र छ, यहाँ "विशेषणं विशेष्येण बहुलम्"ले समास हुन्थ्यो, तर यो सूत्र विधान गर्नाले दिग्वाचक र संख्यावाचक शब्दको विशेष्य विशेषण समास संज्ञामा मात्र होस् अन्यत्र नहोस् भन्ने नियम भयो ।

**तेनेह नेति**– त्यसकारण 'उत्तरा वृक्षाः', 'पञ्च ब्राह्मणाः' यहाँ संज्ञा नबुझिएकोले समास भएन ।

**तद्धितार्थोत्तरेति**– तद्धितार्थविषयमा, उत्तरपद पर भएमा र समाहारवाच्य भएमा पनि, दिग्वाचक र संख्यावाचक शब्दप्रकृतिक सुबन्तसमर्थ, सुबन्तसमर्थका साथ विकल्पले समास गरिन्छन्, त्यसलाई तत्पुरुषसंज्ञा हुन्छ ।

**पौर्वशालः**– पूर्वस्यां शालायां भवः (पूर्वतर्फका घरमा भएको) यस विग्रहमा 'पूर्वा+ङि+शाला+ङि', यहाँ "तद्धितार्थोत्तरपदसमाहारे च"ले 'भवः' यो तद्धितार्थविषय छ र समास भयो, विभक्तिको लुक् भयो, 'पूर्वाशाला' भयो, भएपछि-

**सर्वनाम्न इति**– सर्वनामसंज्ञक शब्दको वृत्तिमात्र[१३५] भएमा पुंवद्भाव होस् ।

'पूर्वाशाला' यहाँ समासवृत्ति छ र पूर्वा यो सर्वनामसंज्ञक शब्दको पुंवद्भाव भयो, तव 'पूर्वशाला' भयो, भएपछि-

**दिक्पूर्वपदादिति**– दिग्वाचक शब्द पूर्वपद हुने समासदेखि 'भव' आदि अर्थमा ञप्रत्यय होस्, संज्ञा नबुझिँदामा । ञकारको इत्संज्ञा, लोप हुन्छ ।

---

१३५ तद्धितवृत्ति र समासवृत्तिमा मात्र पुंवद्भाव हुन्छ भन्ने कैयटको भनाइ छ ।

**९३४. तद्धितेष्वचामादेः ७।२।११७॥**

ञिति णिति च तद्धितेष्वचामादेरचो वृद्धिः स्यात् । "यस्येति च" । पौर्वशालः ॥ पञ्च गावो धनं यस्येति त्रिपदे बहुव्रीहौ । **वा.**(द्वन्द्वतत्पुरुषयोरुत्तरपदे नित्यसमासवचनम्) ॥

**९३५. गोरतद्धितलुकि ५।४।९२॥**

गोऽन्तात्तत्पुरुषाट्टच् स्यात् समासान्तो न तु तद्धितलुकि । पञ्चगवधनः ॥

**९३६. तत्पुरुषः समानाधिकरणः कर्मधारयः१।२।४२॥**

**९३७. संख्यापूर्वो द्विगुः २।१।५२॥**

तद्धितार्थेत्यत्रोक्तस्त्रिविधः संख्यापूर्वो द्विगुसंज्ञः स्यात् ॥

**९३८. द्विगुरेकवचनम् २।४।१॥**

द्विग्वर्थः समाहार एकवत्स्यात् ॥

---

**तद्धितेष्वचामिति–** ञित् र णित् तद्धितसंज्ञक प्रत्यय पर भएमा अच्हरूका मध्येमा आदि अच्को वृद्धि होस् । "यस्येति च"ले आकारको लोप हुन्छ ।

'पूर्वशाला' यहाँ दिग्वाचक शब्द पूर्वपद हुने समास छ र भव अर्थमा "दिक्पूर्वपदात्०"ले ञप्रत्यय भयो, "तद्धितेष्वचामादेः"ले आदिवृद्धि भयो । "यस्येति च"ले आकारको लोप भयो, 'पौर्वशाल' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पौर्वशालः' सिद्ध भयो । यो तद्धितार्थविषयक समासको उदाहरण हो । अब उत्तरपद पर हुने समासको उदाहरण प्रस्तुत गरिन्छ-

**पञ्च गावो धनं यस्येति–** 'पञ्च गावो धनं यस्य' यस विग्रहमा तीन पद भएको बहुव्रीहिसमासमा अवान्तर तत्पुरुषसमास विकल्पले पाएमा तलको वार्तिकले नित्य गर्दछ ।

**(वा.) द्वन्द्वतत्पुरुषयोरिति–** उत्तरपद परभएमा द्वन्द्वसमास र तत्पुरुषसमास नित्य होस् भन्नू ।

**गोरिति–** गोशब्द अन्तमा हुने तत्पुरुषसमासदेखि टच् प्रत्यय होस्, तद्धितसंज्ञक प्रत्ययको लुक् भएमा त नहोस् ।

**पञ्चगवधनः–** पञ्च गावो धनं यस्य यस विग्रहमा 'पञ्चन्+जस्+गो+जस्+धन+सु' यहाँ अनेकमन्यपदार्थे" यो वक्ष्यमाण सूत्रले बहुव्रीहिसमास भएपछि, 'पञ्चन्+जस्+गो+जस्', यहाँ 'धन+सु', उत्तरपदपर भएकोले "तद्धितार्थोत्तरपद०"ले वैकल्पिक समास पाएकोमा "द्वन्द्वतत्पुरुषयोः०" यस वार्तिकले नित्य समास भयो,[१३६] विभक्तिलुक् भयो, 'पञ्चन्+गो+धन' यहाँ "गोरतद्धितलुकि" 'पञ्चन्+गो'देखि पर टच् प्रत्यय भयो, पञ्चन्का नकारको लोप भयो, 'पञ्चगो+अ+धन' यहाँ गोका ओकारका स्थानमा अव् आदेश भयो, 'पञ्चगवधन' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पञ्चगवधनः' सिद्ध भयो । यहाँ टच् प्रत्यय पर भएमा गो शब्दलाई पदसंज्ञा हुँदैन भसंज्ञा हुन्छ । अतः अवङ् प्रकृतिभाव पूर्वरूप हुदैनन् । माथि बताइएको 'गवाग्रम्'मा टच् प्रत्यय पर छैन र सबै हुन्छन् । यहाँ "एचोऽयवायावः"ले अव् आदेश हुन्छ ।

अब समाहार अर्थमा हुने समासको उदाहरण दिइन्छ । त्यसमा विशेष सूत्र छन् ।

**तत्पुरुष इति–** समान अधिकरण भएको तत्पुरुषसमास कर्मधारयसंज्ञक होस् ।

**द्विगुरिति–** द्विगुनिमित्तक समाहारमा एकवद्भाव होस् ।

---

१३६ बहुव्रीहि समासमा 'पञ्चन्+जस्', 'गो+जस्', 'धन+सु'का विशेषण हुनाले दुवैको पूर्वप्रयोग हुन्छ । तत्पुरुष समासमा पञ्चन्शब्द प्रथमानिर्दिष्ट हुनाले त्यसको पूर्वप्रयोग हुन्छ ।

**९३९. स नपुंसकम् २।४।१७॥**

समाहारे द्विगुर्द्वन्द्वश्च नपुंसकं स्यात्। पञ्चानां गवां समाहारः पञ्चगवम्॥

**९४०. विशेषणं विशेष्येण बहुलम् २।१।५७॥**

भेदकम् भेद्येन समानाधिकरणेन बहुलं प्राग्वत्। नीलमुत्पलं नीलोत्पलम्। बहुलग्रहणात्क्वचिन्नित्यम्– कृष्णसर्पः। क्वचिन्न–रामो जामदग्न्यः॥

**९४१. उपमानानि सामान्यवचनैः २।१।५५॥**

घन इव श्यामो घनश्यामः।

---

**स इति**– समाहार अर्थमा भएको द्विगुसमास र द्वन्दसमास नपुसक लिङ्ग होस्।

**पञ्चगवम्**– पञ्चानां गवां समाहारः यस विग्रहमा 'पञ्चन्+जस्+गो+जस्', यहाँ "तद्धितार्थोत्तर०"ले समास भयो, विभक्तिको लुक् भयो, "सङ्ख्यापूर्वो द्विगुः"ले द्विगुसंज्ञा पनि भयो, "द्विगुश्च"ले तत्पुरुषसंज्ञा पनि भयो, तत्पुरुषसंज्ञा भएकोले "गोरतद्धित०"ले टच्प्रत्यय भयो, टकार चकारको इत्संज्ञा, लोप भयो, पञ्चन्का नकारको लोप भयो। 'पञ्च+गो+अ', यहाँ अव्आदेश भयो, 'पञ्चगव'शब्द भयो, यसलाई "द्विगुरेकवचनम्"ले एकवद्भाव, "स नपुंसकम्"ले नपुंसकत्व गरेकोले सु आयो, अम् भयो, पूर्वरूप भयो, 'पञ्चगवम्' सिद्ध भयो। द्वितीयाको अम्मा पञ्चगवम्, तृतीयाको टामा पञ्चगवेन, यस्तै अरू विभक्तिमा पनि एकवचनमात्र हुन्छ।

**विशेषणमिति**– भेदक (विशेषण) सुबन्तसमर्थ भेद्य (विशेष्य) समानाधिकरण सुबन्तसमर्थका साथ बहुलप्रकारले समास होस्, तत्पुरुषसंज्ञक होस्।

**नीलोत्पलम्**–(नीलो कमल) नीलं च तद् उत्पलम्, यस लौकिक विग्रहमा 'नील+सु+उत्पल+सु' यहाँ भेदक सुबन्तसमर्थ 'नील+सु' यसको भेद्य समानाधिकरण सुबन्त 'उत्पल+सु'का साथ "विशेषणं विशेष्येण०"ले समास भयो, समासविधायक सूत्रमा "विशेषणम्" यो प्रथमान्तपदले निर्दिष्ट हुनाले विशेषण 'नील+सु'को पूर्वप्रयोग, विभक्तिलुक्, भयो, 'नील+उत्पल' यहाँ "आद् गुणः"ले गुण भयो, यहाँ 'नीलोत्पल' शब्द बन्यो, त्यसदेखि सु आयो, 'नीलोत्पलम्' सिद्ध भयो।

**बहुलेति**– बहुल शब्द ग्रहण गरेको हुनाले कही नित्य हुन्छ, कही हुदै हुदैन। जस्तै- कृष्णः सर्पः (कालो सर्प) यहाँ 'कृष्ण+सु+सर्प+सु' यहाँ "विशेषणं विशेष्येण०"ले नित्यसमास भयो, विभक्तिलुक् भयो र 'कृष्णसर्प' शब्द बन्यो, त्यसदेखि सु आयो 'कृष्णसर्पः' सिद्ध भयो। नित्यसमास भएकोले यहाँ 'कृष्णः सर्पः' यस्तो वाक्य रहँदैन।

**क्वचिन्नेति**- कही समास नै हुँदैन जस्तै- रामश्चासौ जामदग्न्यः, यस विग्रहमा 'राम+सु+जामदग्न्य+सु' यहाँ यी दुई पदको समास हुदैन, 'रामो जामदग्न्यः' यत्तिकै रहन्छ।

**उपमानानीति**– उपमानवाचक सुबन्तसमर्थहरू साधारणधर्मवाचक सुबन्तसमर्थका साथ समास गरिन्छन्।

**घनश्यामः**– घन इव श्यामः (बादल जस्तै कालो) यस विग्रहमा 'घन+सु+श्याम+सु' यहाँ "उपमानानि सामान्यवचनैः" यस सूत्रले 'घन+सु' यो उपमान को साधारणधर्मबोधक 'श्याम+सु'का बसाथ समास भयो, कर्मधारयसंज्ञा भयो, 'उपमानानि' यो प्रथमान्त पदले निर्दिष्ट हुनाले उपमान 'घन+सु'को पूर्वप्रयोग, विभक्तिलुक् भयो, 'घनश्याम' शब्द बन्यो, त्यसदेखि सु आयो, 'घनश्यामः' सिद्ध भयो। यहाँ लौकिक विग्रहमा उपमावाचक इव शब्दको प्रगोग गरिएको छ, अलौकिक विग्रहमा इव शब्द छैन। समास भएपछि उपमानबाट लक्षणाशक्ति द्वारा इव शब्दको अर्थ बोध हुन आउँछ।

---

**वा.**(शाकपार्थिवादीनां सिद्धये उत्तरपदलोपस्योपसंख्यानम्) । शाकप्रियः पार्थिवः शाकपार्थिवः । देवपुजको ब्राम्ह्मणो देवब्राम्ह्णः ॥

९४२. **नञ्** २।२।६॥

नञ् सुपा सह समस्यते ॥

९४३. **नलोपो नञः** ६।३।७३॥

नञो नस्य लोप उत्तरपदे । न ब्राह्मणः अब्राह्मणः ॥

९४४. **तस्मान्नुडचि** ६।३।७४॥

लुप्तनकारान्नञ उत्तरपदस्याजादेर्नुडागमः स्यात् । अनश्वः । नैकधेत्यादौ तु नशब्देन सह "सह सुपा" इति समासः ॥

---

अर्थात् घन शब्द बादल जस्तो भन्ने अर्थमा लाक्षणिक छ । यो घन साधारण धर्म कसरी भयो त ? बादल जस्तो कालो भन्दा बादल उपमान कालो छ, जसलाई बादल जस्तो भनिएको छ, त्यो उपमेय पनि अवश्य कालो छ र यी दुवैमा रहने श्यामत्व साधारण धर्म भयो ।

**(वा) शाकपार्थिवेति**– शाकपार्थिवादिगणपठित शब्दसिद्धिका निमित्त उत्तरपदको लोप होस् भन्नू ।

**शाकपार्थिवः**– (शाक देशको राजा) शाकं प्रियं यस्य (शाकद्वीप छ प्रिय जसको) यो विग्रहमा बहुव्रीहिसमास भयो र 'शाकप्रिय' शब्द बन्यो, अनि शाकप्रियश्चासौ पार्थिवः, यस विग्रहमा 'शाकप्रिय+सु+पार्थिव+सु' यहाँ "विशेषणं विशेष्येण बहुलम्"ले समास भयो, त्यसको कर्मधारय संज्ञा भयो, "शाकपार्थिवानां०" यस वार्तिकले बहुव्रीहि समासको उत्तरपद 'प्रिय'शब्दको लोप भयो, 'शाकपार्थिव' शब्द बन्यो, त्यसदेखि सु आयो, 'शाकपार्थिवः' सिद्ध भयो ।

**देवब्राह्मणः**– देवस्य पूजकः (देवताको पूजारी) यहाँ "याजका दिभ्यश्चले" षष्ठीसमास भयो र देवपूजक शब्द बन्यो, देवपूजकश्चासौ ब्राह्मण (देवताको पूजा गर्ने ब्राह्मण) यस विग्रहमा 'देवपूजक+सु+ब्राह्मण+सु' यहाँ "विशेषणं विशेष्येण०"ले समास भयो, विभक्तिको लुक् भयो, "शाकपार्थिवादीनां०"ले षष्ठीसमासको उत्तरपद पूजक शब्दको लोप भयो, 'देवब्राह्मण' शब्द बन्यो, त्यसदेखि सु आयो, 'देवब्राह्मणः' सिद्ध भयो ।

**नञिति**– नञ् यो अव्ययको सुबन्त समर्थका साथ समास गरिन्छ ।

**नलोप इति**– नञका नकारको लोप होस् उत्तरपद पर भएमा ।

**अब्राह्मणः**– न ब्राह्मणः (ब्राह्मण बाहेक ब्राह्मण जस्तो) यस विग्रहमा 'न+ब्राह्मण+सु', यहाँ "नञ्"ले समास भयो, प्रथमानिर्दिष्ट हुनाले न शब्दको पूर्वप्रयोग भयो, अनि नकारको "नलोपो नञः"ले लोप भयो, विभक्तिलुक् भयो, 'अब्राह्मण' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अब्रात्मणः' सिद्ध भयो ।

**तस्मादिति**– नकारको लोप भएको नञ्देखि पर रहेको अच् आदिमा हुने उत्तरपदको नुट् आगम होस् ।

**अनश्वः**– न अश्वः, (घोडाभिन्न घोडा जस्तो) यस विग्रहमा 'न+अश्व+सु' यहाँ "नञ्"ले समास भयो, न शब्दको पूर्वप्रयोग भयो, नलोप भयो, 'अ+अश्व' भयो, यहाँ "तस्मान्नुडचि"ले अजादि उत्तरपद अश्व शब्दको नुट् आगम भयो, उट्को अनुबन्ध लोप भयो, टित्त्वाद् अश्व शब्दको अगाडितर्फ न् भयो, 'अनश्व' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अनश्वः सिद्ध भयो ।

**नैकधेति**– नैकधा इत्यादि ठाउँमा त 'न'शब्दले सँग 'एकधा'शब्दको "सह सुपा"ले समास हुन्छ । नञ्का साथ 'एकधा'को समास गरेमा त नलोप, नुट् भएर 'अनेकधा' यस्तो रूप हुन्छ ।

**९४५. कुगतिप्रादयः २।२।१८॥**

एते समर्थेन नित्यं समस्यन्ते । कुत्सितः पुरुषः कुपुरुषः॥

**९४६. ऊर्यादिच्विडाचश्च १।४।६१॥**

ऊर्यादयश्च्व्यन्ता डाजन्ताश्च क्रियायोगे गतिसंज्ञाः स्युः । ऊरीकृत्य । शुक्लीकृत्य । पटपटाकृत्य ।

सुपुरुषः ॥ **वा.**(प्रादयो गताद्यर्थे प्रथमया) । प्रगत आचार्यः प्राचार्यः ।

---

**कुगतीति**– कुशब्द, गतिसंज्ञक शब्द र प्रादि शब्दहरू, सुबन्तसमर्थका साथ नित्य समास गरिन्छन् ।

**कुपुरुषः**– कुत्सितः पुरुषः (निन्दित पुरुष) यस विग्रहमा 'कु+पुरुष+सु' यहाँ "कुगतिप्रादयः"ले समास भयो, 'प्रथमानिर्दिष्टं' हुनाले कुशब्दको पूर्वप्रयोग भयो, सु को लुक् भयो, 'कुपुरुष' शब्द बन्यो, त्यसदेखि सु आयो, 'कुपुरुषः' सिद्ध भयो ।

**उर्यादीति**– ऊरी आदि गणपठितशब्द, च्विप्रत्ययान्त शब्द र डाच्प्रत्ययान्त शब्दहरू क्रियाको योगमा गतिसंज्ञक होऊन् ।

**ऊरीकृत्य**– उरीकृत्य (स्वीकार गरेर) यस विग्रहमा 'उरी+कृ' यहाँ ऊरीलाई "ऊर्यादिच्विडाचः०"ले गतिसंज्ञा, "समानकर्तृकयोः०"ले कृधातुदेखि क्त्वाप्रत्यय भयो, 'उरी+कृत्वा' भयो, उरीको कृत्वासँग "कुगतिप्रादयः"ले समास भएपछि, "समासेऽनञ्पूर्वे०"ले क्त्वाका स्थानमा ल्यप्आदेश भयो, 'उरीकृत्य' सिद्ध भयो ।

**शुक्लीकृत्य**– अशुक्लः शुक्लो यथा सम्पद्यते तथा कृत्वा (जो सेतो छैन त्यसलाई सेतो बनाएर) यस विग्रहमा शुक्ल शब्दपूर्वक कृ धातुदेखि "कृभ्वस्तियोगे०"ले च्वि प्रत्यय भयो, शुक्लका अकारको "अस्य च्वौ"ले दीर्घ ईकार भयो, 'शुल्की+कृ' भयो, च्विप्रत्यान्त 'शुल्की'को "ऊर्यादिच्विडाचः०"ले गतिसंज्ञा भयो, कृ धातुदेखि क्त्वा प्रत्यय भयो, शुक्लीको र कृत्वाको "कुगतिप्रादयः"ले समास भयो, क्त्वाका स्थानमा ल्यप् आदेश भयो, सु आयो, अव्ययत्वात् लुक् भयो 'शुक्लीकृत्य' सिद्ध भयो ।

**पटपटाकृत्य**– (पटचाक् पटचाक् गरेर) पटत्पटत् कृत्वा यस विग्रहमा 'पटत्+कृ' यहाँ "अव्यक्तानुकरणाद् द्व्यजवरार्धादनितौ डाच्"ले डाच् प्रत्यय भयो, "डाचि बहुलं द्वे भवतः"ले पटत्को द्वित्व भयो, 'पटत्+पटत्+आ+कृ' भयो, टिलोप भयो, "नित्यमाम्रेडिते०"ले तकार पकारको पररूप भयो, 'पटपटा+कृ' भयो, पटपटाको "ऊर्यादिच्वि०"ले गतिसंज्ञा भयो, "समासेऽनञ्पूर्वे०"ले क्त्वा प्रत्यय भएपछि, "कुगतिप्रादयः"ले समास भयो, क्त्वाका स्थानमा ल्यप् आदेश भयो, 'पटपटाकृत्य' सिद्ध भयो ।

**सुपुरुषः**– (राम्रो मान्छे) शोभनः पुरुषः यस विग्रहमा 'पुरुष+सु+सु' यहाँ सु यो प्रादि हुनाले 'पुरुष+सु' सँग "कुगतिप्रादयः"ले समास सु शब्दको पूर्व प्रयोग विभक्तिलुक् भयो, 'सुपुरुष' शब्द बन्यो, त्यसदेखि सु आयो, 'सुपुरुषः' सिद्ध भयो ।

**प्रादय इति**– प्र आदि शब्दहरू, गत आदि अर्थमा प्रथमान्तसमर्थले सँग समास गरिन्छन्, त्यो समास तत्पुरुषसंज्ञक हुन्छ ।

**प्राचार्यः**– (प्रधान आचार्य) प्रगतः आचार्य यस विग्रहमा 'आचार्य+सु+प्र', यहाँ गत अर्थ बुझिएकोले प्रशब्दको 'आचार्य+सु'का साथ समास प्र शब्दको पूर्वप्रयोग विभक्तिलुक् भयो, 'प्र+आचार्य' दीर्घ भयो, 'प्राचार्य' शब्द भयो, त्यसदेखि सु आयो, 'प्राचार्यः' सिद्ध भयो ।

**वा**.(अत्यादयः क्रान्ताद्यर्थे द्वितीयया) । अतिक्रान्तो मालामिति विग्रहे–

९४७. **एकविभक्ति चापूर्वनिपाते १।२।४४॥**

विग्रहे यन्नियतविभक्तिकं तदुपसर्जनसंज्ञं स्यान्न तु तस्य पूर्वनिपातः॥

९४८. **गोस्त्रियोरुपसर्जनस्य १।२।४८॥**

उपसर्जनं यो गोशब्दः स्त्रीप्रत्ययान्तं च तदन्तस्य प्रातिपदिकस्य ह्रस्वः स्यात् । अतिमालः । **वा**.(अवादयः क्रुष्टाद्यर्थे तृतीयया) । अवक्रुष्टः कोकिलया–अवकोकिलः । **वा**.(पर्यादयो ग्लानाद्यर्थे चतुर्थ्या) । परिग्लानोऽध्ययनाय पर्यध्ययनः ।

---

**अत्यादय इति**– अति आदि शब्दहरू क्रान्त आदि अर्थ बुझिंदामा द्वितीयान्तसमर्थका साथ समास गरिन्छन् ।

**एकविभक्ति इति**– विग्रहमा जो नियतविभक्तिक शब्द छ, त्यो उपसर्जनसंज्ञक होस् । किन्तु, त्यसको पूर्वप्रयोग नहोस् ।

**गोस्त्रियोरिति**– उपसर्जनसंज्ञक जो गोशब्द छ र जो स्त्रीप्रत्ययान्त शब्द छ, त्यो अन्तमा हुने प्रातिपदिकको ह्रस्व होस् ।

**अतिमालः**- मालाम् अतिक्रान्तः (मालालाई अतिक्रमण गरेको) यस विग्रहमा 'माला+अम्+अति' यहाँ "अत्यादयः क्रान्ताद्यर्थे०"ले समास भयो, समासविधायक शास्त्रमा 'अत्यादय' यो प्रथमान्तपदले देखाइएको अति शब्दको पूर्वप्रयोग, विभक्तिलुक् भयो, 'अतिमाला' भयो, माला यसलाई "एकविभक्ति०"ले उपसर्जनसंज्ञा भयो, "गोस्त्रियोः०"ले उपसर्जनसज्ञक मालाशब्दको ह्रस्व भयो, 'अतिमाल'शब्द बन्यो, त्यसदेखि सु आयो 'अतिमालः' सिद्ध भयो ।

**नियतविभक्तिसंबन्धी विचार**:– यहाँ विग्रहमा नियतविभक्तिक मालाशब्द छ । मालाशब्द सधैं द्वितीयान्त रहन्छ, तर अतिक्रान्तशब्दमा अरू विभक्ति पनि रहन सक्छन् । जस्तै- 'अतिमाल', यो रूप बनाउँदा, मालाम् अतिक्रान्तः, यस्तो विग्रह राखियो । अतिमालशब्द प्रथमान्त भयो । 'अतिमालम्' यो रूप बनाउँदा, मालाम् अतिक्रान्तम् यस्तो विग्रह भयो र यहाँ अतिक्रान्तशब्द द्वितीयान्त रह्यो । 'अतिमालेन' यो रूप बनाउँदा, मालाम् अतिक्रान्तेन हुन्छ । यसरी अतिमालम्, अतिमालेन, अतिमालाय, आदिशब्द बनाउँदा अतिक्रान्तशब्दका विभक्ति बदलिन्छन् । मालाशब्द सदा द्वितीयान्त रहन्छ । अतः यो नियतविभक्तिक भयो र यसलाई उपसर्जनसंज्ञा भयो, यसको ह्रस्व भयो, यस्तै वक्ष्यमाण वार्तिकमा कोकिला, कौशाम्बी आदिशब्द पनि नियतविभक्तिक छन् र तिनको पनि उपसर्जनसंज्ञा भएर ह्रस्व हुन्छ ।

**अवादय इति**– अवआदि शब्दहरू क्रुष्टआदि अर्थमा तृतीयान्तसमर्थका साथ समास गरिन्छन् ।

**अवकोकिलः**– अवक्रुष्टः कोकिलया (कोइलीले गाली गरिएको) यस विग्रहमा 'कोकिला+टा+अव' यहाँ "अवादयः०" यो वार्तिकले समास भयो, 'अवादयः' यो प्रथमान्तले निर्दिष्ट हुनाले अव शब्दको पूर्वप्रयोग भयो, विभक्तिलुक् भयो, कोकिला शब्दको "एकविभक्ति०"ले उपसर्जनसंज्ञा भएपछि ह्रस्व भयो, 'अवकोकिल' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अवकोकिलः' सिद्ध भयो ।

**पर्यादय इति**– परिआदि शब्दहरू ग्लानआदि अर्थमा चतुर्थ्यन्तसमर्थका साथ समास गरिन्छन् ।

**पर्यध्ययनः**– अध्ययनाय परिग्लानः (पढ्नका निमित्त थाकेको) यस विग्रहमा 'परि+अध्ययन+ङे' यहाँ 'परि'शब्दको चतुर्थ्यन्त 'अध्ययन+ङे'सँग "पर्यादयः०" यो वार्तिकले समास भयो, पूर्ववत्

---

**वा.**(निरादयः क्रान्ताद्यर्थे पञ्चम्या) । निष्क्रान्तः कौशाम्ब्याः- निष्कौशाम्बिः ॥

**९४९. तत्रोपपदं सप्तमीस्थम् ३।१।९२॥**

सप्तम्यन्ते पदे कर्मणीत्यादौ वाच्यत्वेन स्थितं यत्कुम्भादि तद्वाचकं पदमुपपदसंज्ञं स्यात् ॥

**९५०. उपपदमतिङ् २।२।१९॥**

उपपदं सुबन्तं समर्थेन नित्यं समस्यते । अतिङन्तश्चायं समासः । कुम्भं करोतीति कुम्भकारः । अतिङ् किम् ? मा भवान् भूत् । माङि लुङिति सप्तमीनिर्देशान्माङुपपदम् । **(वा०)** गतिकारकोपपदानां कृद्भिः सह समासवचनं प्राक् सुबुत्पत्तेः ।

---

परिशब्दको पूर्वप्रयोग, विभक्तिलुक् भयो, 'परि+अध्ययन' भयो, यण् भयो, 'पर्यध्ययन' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पर्यध्ययनः' सिद्ध भयो ।

**निरादय इति**– निर्आदि शब्दको क्रान्तआदि अर्थ बुझिँदामा पञ्चम्यन्तसमर्थसँग समास गरिन्छ, त्यो समास तत्पुरुषसंज्ञक हुन्छ ।

**निष्कौशाम्बिः**– कौशाम्ब्या निष्क्रान्तः (कौशाम्बी नगरीबाट निस्केको) यस विग्रहमा 'कौशाम्बी+ङसि+निर्' यहाँ "निरादयः क्रान्ताद्यर्थे०" यस वार्तिकले समास भयो, निर् शब्दको पूर्वप्रयोग विभक्तिलुक् भयो, 'निर्कौशाम्बी'शब्द भयो, यहाँ कौशाम्बीशब्दलाई उपसर्जनसंज्ञा भयो, "गोस्त्रियोः०"ले ह्रस्व भएर इकार भयो, 'निर्+कौशाम्बि' भयो, निर्का रेफका स्थानमा विसर्ग, विसर्गका स्थानमा "इदुदुपधस्य"ले षत्व भयो । 'निष्कौशाम्बि' भयो, त्यसदेखि सु आयो, 'निष्कौशाम्बिः' सिद्ध भयो ।

**तत्रेति**– सप्तम्यन्तपद कर्मणि आदि ठाउँमा वाच्यत्वले रहेको जो घडा आदि पदार्थ छ, त्यसको वाचकपद उपपदसंज्ञक होस् ।

**उपपदमिति**– उपपद सुबन्तको, समर्थका साथ नित्यसमास गरिन्छ ।

**अतिङश्चायमिति**– यो समास तिङन्तभिन्न समर्थका साथ हुन्छ ।

**कुम्भकारः**– कुम्भं करोति (घडा बनाउँछ) यस लौकिक विग्रहमा कर्मवाचक कुम्भशब्द देखि कृत्प्रत्ययको योग विवक्षित[१३७] हुनाले "कर्तृकर्मणोः कृति"ले षष्ठीविभक्ति आयो र 'कुम्भ+ङस्+कृ' यहाँ 'कुम्भ+ङस्'लाई "तत्रोपपदं०"ले उपपदसंज्ञा भयो, "कर्मण्यण्"ले अण्प्रत्यय भयो, वृद्धि भयो, 'कुम्भ+ङस्+कार' भयो, "गतिकारकोपपदानां०" यो वक्ष्यमाण वार्तिकको सहकार गरेर कारदेखि सु ल्याउनु भन्दा पहिले नै उपपद सुबन्त 'कुम्भ+ङस्'को 'कार'का साथ समास भयो, विभक्तिको लुक् भयो, 'कुम्भकारः'शब्द बन्यो, त्यसदेखि सु आयो, 'कुम्भकारः' सिद्ध भयो ।

**अतिङ् किमिति**– "उपपदमतिङ्" यो सूत्रमा तिङन्त भिन्न किन भन्नु, नभन्ने हो भने 'मा+भूत्' यहाँ 'मा' यो उपपदको 'भूत्' यो तिङन्तका साथ समास होला, सो नहोस् भनेर अतिङ् भनियो र 'मा+भूत' यहाँ समास भएन । समास नभएको हुनाले भवत् शब्द माझमा रहेर 'मा भवान् भूत्' यस्तो प्रयोग हुन सक्यो । समास भएको भए 'मा' र 'भूत्' यी दुई पदलाई अलग-अलग राख्न मिल्दैनथ्यो । "माङि लुङ्" यहाँ माङि यो सप्तम्यन्तले निर्देशन गरेको हुनाले 'माङ्' यो उपपद छ ।

**(वा) गतीति**– गति, कारक र उपपदको कृदन्तसमर्थका साथ सुप् उत्पत्ति हुनु भन्दा पहिले समास हुन्छ ।

---

१३७ "कर्मणि द्वितीया"ले अनुक्त कर्ममा कर्मबोधक प्रातिपदिकदेखि द्वितीया विभक्ति हुने हो यहाँ कर्तामा अण्प्रत्यय हुने हुनाले कर्म अनुक्त छ र कर्मबोधक प्रातिपदिक कुम्भशब्ददेखि द्वितीयाविभक्ति पाउँछ । त्यसलाई बाधेर "कतृकर्मणोः कृति"ले षष्ठी विभक्ति हुन्छ । अहिले कृत्प्रत्यय भैसकेको नभए पनि त्यो विवक्षित अर्थात् वुद्धिस्थ भै सकेको छ र षष्ठी विभक्ति हुन्छ । यो कुरा अघि पनि भनिएको छ ।

व्याघ्री । अश्वक्रीती । कच्छपीत्यादि ।

**९५१. तत्पुरुषस्याङ्गुलेः संख्याव्ययादेः ५।४।८६॥**

संख्याव्ययादेरङ्गुल्यन्तस्य तत्पुरुषस्य समासान्तोऽच् स्यात् । द्वे अङ्गुली प्रमाणमस्य द्व्यङ्गुलम् ।

---

व्याघ्री । अश्वक्रीती । कच्छपीत्यादि- व्याघ्री अश्वक्रीती र कच्छपी यी तीन क्रमशः गति कारक र उपपदको कृदन्तका साथ सुबन्त उत्पत्ति हुनु भन्दा पहिले समास गर्नुको फलस्वरूप उदाहरण हुन् ।

**व्याघ्री**- विशेषण आ-समन्तात् जिघ्रति या, (विशेषले जो चारैतिर सुँघ्छ) यस विग्रहमा 'वि+आ' उपसर्ग पूर्वमा हुने घ्राधातु देखि "आतश्चोपसर्गे"ले कप्रत्यय भयो 'वि+आ+घ्र' भयो यहाँ 'वि+आ' दुवै गति (उपसर्ग) हुन्, घ्र कृदन्त हो, समर्थ पनि छ र 'वि+आ' यी दुवैको घ्रका साथ "गतिकारकोपपदानां" यो वार्तिक लाएर "कुगतिप्रादयः"ले समास भयो, सन्धिकार्य भयो, 'व्याघ्र' भयो, यो व्याघ्रत्व जातिवाचक शब्द वन्यो, यसदेखि "जातेरस्त्रीविषयादयोपधात्" यो सूत्रले ङीषप्रत्यय भयो व्याघ्री शब्द बन्यो, त्यसदेखि सु आएर, 'व्याघ्री' यो रूप सिद्ध भयो ।

यदि यहाँ समास गर्नु भन्दा पहिले सु आदि विभक्ति ल्याउने हो भने, स्वार्थ, द्रव्य, लिङ्ग, सङ्ख्या, कारक, यी पाँच प्रातिपदिकार्थ मध्ये सङ्ख्या र कारक पछि उपस्थित हुने हुनाले सङ्ख्या र कारक बुझाउने विभक्ति र वचन पछि ल्याउनु पर्ने र लिङ्गको उपस्थिति पहिले हुने हुनाले लिङ्गबोधकप्रत्यय पहिले गर्नुपर्ने हुन्छ । यहाँ समास नगरीकन जाति बुझिँदैन र जातिलक्षण ङीप् हुन्न । अकारान्तशब्द हुनाले "अजाद्यतष्टाप्"ले टाप् प्रत्यय हुन्छ र 'व्याघ्रा' यस्तो अनिष्ट रूप हुन्छ । सो नहोस् भनेर 'व्याघ्रत्व'जाति बुझाउन पहिले समास गर्नुपर्छ । व्याघ्रत्व जाति बुझिएपछि लिङ्गबोधक प्रत्यय जातिलक्षण ङीष् हुन्छ, अनि व्याघ्री यस्तो अभीष्ट रूप सिद्ध हुन्छ ।

**अश्वक्रीती**- अश्वेन क्रीता (घोडाले किनिएकी) यो अलौकिक विग्रहमा 'अश्व+टा+क्रीत', यहाँ यो वार्तिक लाएर कृदन्तदेखि सुप् नल्याउदै "कर्तृकरणे कृता बहुलम्"ले 'अश्व+टा'को क्रीत शब्दसँग समास हुन्छ र 'अश्वक्रीत'शब्द बन्दछ । अनि "क्रीतात् करणपूर्वात्"ले ङीष् हुन्छ र 'अश्वक्रीती'शब्द बन्दछ । यहाँ क्रीत शब्ददेखि पहिले नै सुप् ल्याउने हो भने, त्यस भन्दा पहिले लिङ्गबोधक प्रत्यय टाप् नै हुन्छ । किनकि समास नभएसम्म करण पूर्वमा भए पनि अश्व छुट्टै प्रतिपदिक क्रीत छुट्टै प्रातिपदिक हुन्छ, यौटै प्रातिपदिक नभएकोले "क्रीतात्करणपूर्वात्"ले करण-पूर्ववत्त्व-लक्षण ङीष् प्रत्यय हुन्न । अत एव यहाँ पनि क्रीत शब्ददेखि सुप् नल्याउदै समास गर्नु पऱ्यो ।

**कच्छपी**- कच्छेन पिबति (मुखसम्पुटले पिउँछ) यो विग्रहमा 'कच्छ+टा' पूर्वमा हुने पा धातुदेखि "सुपि स्थः" यो सूत्रको योग विभाग गरेकोले क प्रत्यय भयो, 'कच्छ+टा+प' भयो, यहाँ 'प'शब्ददेखि सुप् नल्याउदै "गतिकारकोपपदानां०" यो वार्तिक लाएर 'कच्छ+टा'को प शब्दसँग उपपद समास भयो र कच्छपत्व जाति बुझिएकोले जाति लक्षण ङीष् भएर 'कच्छपी' सिद्ध भयो । यहाँ पनि समास गर्नुभन्दा पहिले प शब्ददेखि सुप् ल्याउँदा 'कच्छपजाति' नबुझिएर सामान्य स्त्रीत्व मात्र बुझिन्थ्यो र टाप् प्रत्यय हुन्थ्यो र 'कच्छपा'शब्द हुन्थ्यो, सो नहोस् भनेर सुप् ल्याउनु भन्दा पहिले नै समास गरियो ।

**तत्पुरुषस्येति**- सङ्ख्यावाचक शब्द र अव्ययसञ्ज्ञक शब्द आदिमा हुने अङ्गुलि शब्द अन्त्यमा हुने तत्पुरुषसमासदेखि समासान्त अच् प्रत्यय होस् ।

**द्व्यङ्गुलम्**- द्वे अङ्गुली प्रमाणमस्य (दुई अङ्गुल छ प्रमाण यसको) यस विग्रहमा 'द्वि+औ+अङ्गुलि+औ', यहाँ 'प्रमाणम् अस्य', यो तद्धितार्थ बुझिएकोले "तद्धितार्थोत्तरपद समाहारे च"ले संख्यावाचक-शब्द-प्रकृतिक सुबन्तसमर्थ 'द्वि+औ'को अङ्गुलि-शब्दप्रकृतिक सुबन्तसमर्थ

---

निर्गतमङ्गुलिभ्यो निरङ्गुलम् ॥

**९५२. अहः सर्वैकदेशसंख्यातपुण्याच्चरात्रेः ५।४।८७॥**

एभ्योरात्रेरच् स्यात्, चात्संख्याव्ययादेः । अहर्ग्रहणं द्वन्द्वार्थम् ॥

**९५३. रात्राह्नाहाः पुंसि २।४।२९॥**

एतदन्तौ द्वन्द्वतत्पुरुषौ पुंस्येव । अहश्चरात्रिश्चाहोरात्रः । सर्वरात्रः । संख्यातरात्रः ।

---

'अङ्गुलि+औ' सँग समास भयो, विभक्तिको लुक् भयो, "तत्पुरुषस्याङ्गुलेः०"ले समासान्त अच्प्रत्यय भयो, 'द्वि+अङ्गुलि+अ' यहाँ इकारको "यस्येति च"ले लोप भयो, सन्धिकार्य भयो, 'द्व्यङ्गुल'शब्द बन्यो, द्व्यङ्गुल शब्ददेखि प्रमाण अर्थमा "प्रमाणे द्वयसज्दघ्नञ्मात्रचः"ले मात्रच् प्रत्यय भएर "द्विगोर्नित्यम्" यस वार्तिकले लुक् भयो, 'द्व्यङ्गुल'शब्द नै भयो, त्यसदेखि सु आयो 'द्व्यङ्गुलम्' सिद्ध भयो । यसको प्रयोग- द्व्यङ्गुलम् दारु (दुईऔंला प्रमाण भएको काठ)

**निरङ्गुलम्**- अङ्गुलिभ्यो निर्गतम् (औंलाबाट निस्केको) यस विग्रहमा 'निर्+अंगुलि+भ्यस्', यहाँ "निरादयः क्रान्ताद्यर्थे पञ्चम्या" यस वार्तिकले समास भयो, विभक्तिको लुक् भयो, निर्को पूर्वप्रयोग तत्पुरुष संज्ञा भयो, "तत्पुरुषस्याङ्गुलेः०"ले अव्यय शब्द आदिमा हुने अङ्गुलि शब्द अन्तमा हुने तत्पुरुषसमास भएकोले अच् प्रत्यय भयो, "यस्येति च"ले इकारको लोप भयो, 'निरङ्गुल'शब्द बन्यो । त्यसदेखि सु आयो अम् भयो, 'निरङ्गुलम्' सिद्ध भयो ।

**यसको प्रयोग**- निरङ्गुलमोदनं न शोभते (औंलाबाट बाहिर निस्केको भात शोभा दिदैन ।)

अहरिति । अहन् शब्द, सर्व शब्द, एकदेशवाचक शब्द, संख्यात शब्द र पुण्य शब्द पूर्वमा हुने रात्रि शब्ददेखि समासान्त अच् प्रत्यय होस्, चकार पढ्नाले संख्यावाचक शब्द र अव्ययसंज्ञक शब्द पूर्वमा हुने रात्रि शब्ददेखि पनि समासान्त अच् प्रत्यय होस् ।

**अहर्ग्रहणमिति**– यहाँ अहन् शब्द ग्रहण गरेको द्वन्द्वसमासको निमित्त हो । अहन् शब्दको रात्रि शब्दका साथ तत्पुरुषसमास हुनै सक्तैन । अहश्चासौ रात्रिश्च यस्तो समास हुँदैन ।

**रात्राह्नेति**– रात्र शब्द, अह्न शब्द, अह शब्द अन्तमा हुने द्वन्द्व र तत्पुरुष समास पुंलिङ्गमा रहन्छन् ।

**अहोरात्रः**- अहश्च रात्रिश्च एतयोः समाहारः (दिन र रात यी दुईको समाहार)– यो विग्रहमा 'अहन्+सु+रात्रि+सु' यहाँ "चार्थे द्वन्द्वः"ले द्वन्द्वसमास विभक्तिलुक् "अहः सर्वैकदेश०"ले अच् प्रत्यय भएर 'अहन्+रात्रि+अ' भयो, इकारको "यस्येति च"ले लोप भयो, 'अहन्+रात्र' भयो, "अहन्"यो सूत्रले रुत्व, उत्व, गुण भयो, 'अहोरात्र' भयो, "जातिरप्राणिनाम्"ले एकवद्भाव भयो, "स नपुंसकम्"ले नपुंसक लिङ्ग पाएमा "रात्राह्नाहाः पुंसि" यो सूत्रले पुंस्त्व भयो, त्यसदेखि सु आयो, 'अहोरात्रः' सिद्ध भयो ।

**सर्वरात्रः**- सर्वा चासौ रात्रिः (सग्लो रात) यस विग्रहमा 'सर्वा+सु+रात्रि+सु' यहाँ "पूर्वकालैकसर्वजरत्पुराणनवकेवलाः०" यो सूत्रले समास, विभक्तिलुक् भयो, "पुंवत्कर्म धारय०"ले पुंवद्भाव भएर सर्वा शब्दको सर्व भयो, अच्प्रत्यय भयो, "यस्येति च"ले इकारको लोप भयो, 'सर्वरात्र' शब्द बन्यो, "परवल्लिङ्गं द्वन्द्वतत्पुरुषयोः"ले परवल्लिङ्ग स्त्रीत्व पाएकोमा "रात्रान्हाहाः पुंसि"ले पुंस्त्व भयो, सु आयो, 'सर्वरात्रः' सिद्ध भयो ।

**सङ्ख्यातरात्रः**- सङख्याता चासौ रात्रिः (गिन्ती गरिएको रात) यस विग्रहमा 'संख्याता+सु+रात्रि+सु', यहाँ "विशेषणं विशेष्येण"ले समास, विभक्तिलुक्, पुंवद्भाव भयो, "अहः सर्वैकदेश०"ले अच् प्रत्यय भयो, "यस्चेति च"ले इकारको लोप भयो, यसको परवल्लिङ्ग पाएकोमा "रात्राह्न्हाः०"ले पुंस्त्व भयो, 'संख्यातरात्र' शब्द बन्यो, त्यसदेखि सु आयो, 'संख्यातरात्रः' सिद्ध भयो ।

वा.(संख्यापूर्वरात्रं क्लीबम् ) । द्विरात्रम् । त्रिरात्रम् ॥

**९५४.राजाऽहः सखिभ्यष्टच् ५।४।९१॥**

एतदन्तात्तत्पुरुषाट्टच् स्यात् । परमराजः ॥

**९५५. आन्महतः समानाधिकरणजातीययोः ६।३।४६॥**

महत आकारोऽन्तादेशः स्यात्समानाधिकरणे उत्तरपदे जातीये च परे । महाराजः । प्रकारवचने जातीयर् । महाप्रकारो महाजातीयः ॥

---

**(वा.)संख्यापूर्वमिति**– संख्यावाचक शब्द पूर्वमा हुने रात्र शब्द नपुंसकलिङ्ग हुन्छ ।

**द्विरात्रम्**– द्वयो रात्र्योः समाहारः (दुई रातको समाहार) यस विग्रहमा 'द्वि+औ+रात्रि+औ' यहाँ "तद्धितार्थोत्तरपदसमाहारे च"ले समास भयो, विभक्तिको लुक् भयो, द्वि शब्द रात्रिको अवयव वाचक हुनाले "अह सर्वैकदेश०"ले अच् प्रत्यय, इकारलोप भयो 'द्विरात्र' शब्द बन्यो, यसलाई "रात्राह्न्हाः०"ले पुंस्त्व पायो, त्यसलाई बाधेर "संख्यापूर्वं रात्रं क्लीबम्" यस वार्तिकले नपुंसक लिङ्ग भयो, "द्विगुरेकवचनम्"ले एकवद्भाव भयो, सु आयो, 'द्विरात्रम्' सिद्ध भयो ।

**त्रिरात्रम्**– तिसृणाम्, रात्रीणाम्, समाहार (तीन रातको समाहार) यस विग्रहमा 'तिसृ+जस्+रात्रि+जस्' यहाँ पूर्ववत् समास, विभक्तिलुक्, अच्प्रत्यय, इकारलोप भएर 'त्रिरात्र'शब्द बनेपछि "रात्राह्नाहाः"ले पाएको पुंस्त्वलाई बाधेर "सङ्ख्यापूर्वं०" यो वार्तिकले नपुंसकत्व भयो, "द्विगुरेकवचनम्"ले एकवद्भाव भयो, त्यसदेखि सु आयो, 'त्रिरात्रम्' सिद्ध भयो ।

**राजाह इति**– राजन् शब्द, अहन् शब्द, सखि शब्द अन्तमा हुने तत्पुरुषसमासदेखि टच् प्रत्यय होस् ।

**परमराजः**– परमश्चासौ राजा (श्रेष्ठ राजा) यस विग्रहमा 'परम+सु+राजन्+सु' यहाँ "विशेषणं विशेष्येण०"ले समास आदि कार्य भयो, 'परमराजन्' बन्यो, यसदेखि "राजाहः सखिभ्यष्टच्"ले टच् प्रत्यय भयो, 'परमराजन्+अ' यहाँ "नस्तद्धिते"ले टिलोप भयो, परमराज शब्द बन्यो, त्यसदेखि सु आयो, 'परमराजः' सिद्ध भयो ।

**आन्महत इति**– महत् शब्दका अन्त्य अल्का स्थानमा आकार आदेश होस्, समानाधिकरण उत्तरपद पर भएमा र जातीयर् प्रत्यय पर भएमा पनि ।

**महाराजः**– महाँश्चासौ राजा (ठूला राजा) यस विग्रहमा 'महत्+सु+राजन+सु' यहाँ "विशेषणं विशेष्येण०"ले समास, विभक्तिलुक्, महत् शब्दको पूर्वप्रयोग भयो । समानाधिकरण उत्तरपद पर छ र "आन्महतः"ले महत्का तकारका स्थानमा आकार, दीर्घ भयो, 'महाराजन्'शब्द भयो, "राजाहःसखिभ्यः०"ले टच् प्रत्यय, टिलोप भयो, 'महाराज'शब्द बन्यो, त्यसदेखि सु आयो, 'महाराजः' सिद्ध भयो ।

यस्तै प्रकारले महायुद्धम्, महाभारतम्, महापुरुषः आदि शब्द मा पनि महत् शब्दका तकारका स्थानमा आकार हुन्छ । महती चासौ नदी, महती चासौ सुन्दरी आदि स्थलमा महती शब्दको [१३८] पुंवद्भाव भएर ङीलोप हुन्छ र महत् शब्दका तकारका स्थानमा आकार भएर महानदी, महासुन्दरी आदि रूप बन्दछन् ।

**महाजातीयः**– महान् प्रकार (ठूलो प्रकार) यस विग्रहमा "प्रकारवचने जातीयर्" ले जातीयर् प्रत्यय भयो, 'महत्+जातीय' भयो "आन्महतः०"ले महत्का तकारका स्थानमा आकार भयो, दीर्घ भयो, 'महाजातीय'शब्द बन्यो, त्यसदेखि सु आयो, 'महाजातीयः' सिद्ध भयो । समानाधिकरण उत्तरपद नभएमा महत्का तकारका स्थानमा आकार हुदैन, जस्तै महतां सेवा, यस विग्रहमा 'महत्सेवा' यस्तो हुन्छ ।

---

१३८ "पुंवत्कर्मधारयजातीयदेशीयेषु"ले पुंवद्भाव हुन्छ ।

**९५६. द्व्यष्टनः संख्यायामबहुव्रीह्यशीत्योः ६।३।४७॥**

आत्स्यात्। द्वौ च दश च द्वादश। अष्टाविंशतिः॥

**९५७. त्रेस्त्रयः ६।३।४८॥**

त्रयोदश। त्रयोविंशतिः। त्रयस्त्रिंशत्॥

**९५८. परवल्लिङ्गं द्वन्द्वतत्पुरुषयोः २।३।२६॥**

एतयोः परपदस्येव लिङ्गं स्यात्। कुक्कुटमयूर्याविमे। मयूरीकुक्कुटाविमौ। अर्धपिप्पली। **वा**.(द्विगुप्राप्तापन्नालम्पूर्वगतिसमासेषु प्रतिषेधो वाच्यः)। पञ्चसु कपालेषु संस्कृतः पञ्चकपालः पुरोडाशः॥

---

**द्व्यष्टन इति**– संख्या बुझिंदामा द्वि शब्द र अष्टन्शब्दका अन्त्य अल्का स्थानमा आकार आदेश होस्, बहुव्रीहि समासमा र अशीति शब्द पर भएमा त न होस्।

**द्वादश**– द्वौ च दश च (दुइ र दश) यस विग्रहमा 'द्वि+औ+दशन्+जस्' यहाँ "चार्थे द्वन्द्वः" यो वक्ष्यमाणसूत्रले द्वन्द्व समास भयो, विभक्तिलुक् भयो, "द्वयष्टन संख्यायाम्०"ले द्विका इकारका स्थानमा आकार भयो, 'द्वादशन्'शब्द भयो, त्यसदेखि जस् आयो। "षड्भ्यो लुक्"ले जस्को लुक् भयो, नकारको "नलोपः प्रातिपदिकान्तस्य"ले लोप भयो, 'द्वादश' सिद्ध भयो। अथवा द्वयधिका दश (दुई बढी भएका दश) यस विग्रहमा 'द्वौ अधिकौ येषु दशसु' यस्तो बहुव्रीहिसमास भएको द्वयधिक शब्द र दशन् शब्दको विशेषण विशेष्यसमास भएर बहुव्रीहिसमासको उत्तरपद अधिक शब्दको "शाकपार्थिवादीनां०"ले लोप हुन्छ र द्विशब्दको आत्व हुन्छ। यसरी पनि द्वादश शब्द बन्दछ।

**अष्टाविंशतिः**– अष्टौ च विंशतिश्च (आठ र बीस) यस विग्रहमा 'अष्टन्+जस्+विंशति+सु' यहाँ पूर्ववत् द्वन्द्वसमास भएर 'अष्टन्+विंशति', भयो " द्वष्टनः संख्यायामबहुव्रीह्यशीत्योः"ले आत्व भयो, दीर्घ भयो, 'अष्टाविंशति'शब्द बन्यो, त्यसदेखि सु आयो, 'अष्टाविंशतिः' सिद्ध भयो।

**परवल्लिङ्गमिति**– द्वन्द्वसमास र तत्पुरुषसमासमा पछिल्लो शब्दको जस्तै लिङ्ग हुन्छ। यो परवल्लिङ्ग इतरेतर द्वन्द्वमा मात्र हो। समाहारमा त "स नपुंसकम्"ले नपुंसकत्व गर्दछ।

**कुक्कुटमयूर्यौ**– कुक्कुटश्च मयूरी च (कुखुरो र मुजुर्नी) यस विग्रहमा द्वन्द्वसमास भएर बनेको 'कुक्कुटमयूरी'शब्दको उक्त "परवल्लिङ्गम्०" यस सूत्रले स्त्रीलिङ्ग निर्देश गरेकोले स्त्रीलिङ्ग प्रथमाको द्विवचनमा 'कुक्कुटमयूर्यौ' यस्तो रूप भयो 'इमे' यो इदम् शब्दको स्त्रीलिङ्गमा प्रथमाको द्विवचन हो।

**मयूरीकुक्कुटौ**– मयूरी च कुक्कुटश्च (मजुर्नी र कुखुरो) यस्तो विग्रहमा द्वन्द्वसमास भएर बनेको 'मयूरीकुक्कुट'शब्द परवल्लिङ्ग हुँदा पुंलिङ्गी भयो र प्रथमाको द्विवचनमा 'मयूरीकुक्कुटौ' भयो। यसको विशेषण 'इमौ' पुंलिङ्गमा इदम् शब्दको द्विवचनको रूप हो।

**अर्धपिप्पली**– अर्धं पिप्पल्याः (पिपलाको आधा) यस विग्रहमा "अर्धं नपुंसकम्"ले तत्पुरुषसमास भएर बनेको 'अर्धपिप्पली'शब्द पछिल्लो 'पिप्पली'शब्द जस्तै स्त्रीलिङ्गी भयो र सु आयो, लोप भयो, 'अर्धपिप्पली' सिद्ध भयो।

**द्विगुप्राप्तेति**– द्विगुसमास प्राप्त, आपन्न र अलम् शब्द पूर्वमा हुने समास गतिसमासमा परवल्लिङ्ग नहोस्।

**पञ्चकपालः**– पञ्चसु कपालेषु संस्कृतः (पाँचवटा कपालमा संस्कार गरिएको) यस विग्रहमा 'पञ्चन्+सुप्+कपाल+सुप्' यहाँ "तद्धितार्थोतरपद०" यो सूत्रले "संस्कृतम्" यो तद्धितार्थमा समास भयो, विभक्तिलुक् भयो, "सङ्ख्यापूर्वो द्विगुः"ले द्विगुसंज्ञा भयो, "संस्कृतं भक्षाः"ले अण् प्रत्यय भयो, "द्विगोर्लुगनपत्ये०"ले अण् प्रत्ययको लुक् भयो, 'पञ्चन्+कपाल' यहाँ नकारको

**९५९. प्राप्तापन्ने च द्वितीयया २।२।४॥**

समस्येते, अकारश्चानयोरन्तादेशः। प्राप्तो जीविकां प्राप्तजीविकः। आपन्नजीविकः। अलं कुमार्यै, अलंकुमारिः। अत एव ज्ञापकात्समासः। निष्कौशाम्बिः॥

**९६०. अर्धर्चाः पुंसि च २।४।३१॥**

अर्धर्चादयः शब्दाः पुंसि क्लीबे च स्युः। अर्धर्चः। अर्धर्चम्।

---

"नलोपः प्रातिपदिकान्तस्य" यो वार्तिकले लोप भयो, 'पञ्चकपाल'शब्द बन्यो, पञ्चकपाल शब्दको "परवल्लिङ्गम्०"ले पछिल्लो कपाल शब्द नपुंसक हुनाले नपुंसकत्व पाएकोमा "द्विगुप्राप्तापन्नालं०"ले निषेध भयो, आफ्नो विशेष्य 'पुरोडाश'शब्द जस्तै पुंलिङ्गी भयो। त्यसदेखि सु आयो, 'पञ्चकपालः पुरोडाशः' सिद्ध भयो। पञ्चकपालः पुरोडाशः (पाँचवटा खप्परमा संस्कार गरिएको हवि विशेष)

**प्राप्तापन्ने इति**– प्राप्त शब्द र आपन्न शब्दप्रकृतिक सुबन्तसमर्थ, द्वितीयान्तसमर्थका साथ समास गरिन्छन्, यी दुई शब्दका अन्त्य अल्का स्थानमा अकार आदेश पनि हुन्छ।

**प्राप्तजीविकः**–जीविकाम् प्राप्तः (जीविका पाएको) यस विग्रहमा 'प्राप्त+सु+जीविका+अम्' यहाँ "प्राप्तापन्ने०" यस सूत्रले 'प्राप्त+सु'को 'जीविका+अम्'सँग समास भयो, विभक्तिको लुक् भयो, "उपसर्जनत्वात्" प्राप्त शब्दको पूर्वप्रयोग भयो, "एकविभक्ति चापूर्व०"ले जीविका शब्दको पनि उसर्जनसंज्ञा भएर ह्रस्व भयो, 'प्राप्तजीविक' शब्द बन्यो, यहाँ जीविका शब्द स्त्रीलिङ्गी हुनाले "परवल्लिङ्गम्०"ले स्त्रीत्व पाएको "द्विगुप्राप्तापन्नालं०"ले निषेध भयो, विशेष्य को जस्तो लिङ्ग भयो, 'प्राप्तजीविक' शब्ददेखि सु आयो, 'प्राप्तजीविकः' सिद्ध भयो।

**आपन्नजीविकः**– जीविकाम् आपन्नः (जीविका पाएको) यस विग्रहमा 'आपन्न+सु+जीविका+अम्' यहाँ पूर्ववत् प्रक्रिया भएर 'आपन्नजीविक'शब्द बन्यो, "द्विगुप्राप्तापन्नालं०"ले 'परवल्लिङ्ग' निषेध गरेकोले विशेष्यको जस्तै लिङ्ग भयो, आपन्नजीविक शब्ददेखि सु आयो, 'आपन्नजीविकः' सिद्ध भयो।

यहाँ परवल्लिङ्ग भएको भए पुनः टाप् प्रत्यय हुन्थ्यो र पुरुषविशेष्य भएपनि 'प्राप्तजीविका', 'आपन्नजीविका' यस्तो विशेषण रहन्थ्यो। अकार अन्त्य अल्का स्थानमा आदेश गर्नको फल जीविकाम् प्राप्ता, जीविकाम् आपन्ना, स्त्री यो विग्रहमा समास भएपछि प्राप्ता र आपन्ना शब्दको आकारका स्थानमा अकार भएर 'प्राप्तजीविका', 'आपन्नजीविका' यस्तो रूप हुन्छ।

**अलङ्कुमारिः**– अलम् कुमार्यै (कुमारीलाई योग्य) यस विग्रहमा यही "द्विगुप्राप्ता पन्नालं०" वार्तिक नै ज्ञापक भएको हुनाले 'अलम्'शब्दको 'कुमारी+ङे'सँग समास भयो "एकविभक्ति चापूर्व०"ले कुमारी शब्दको ह्रस्व भयो, अलम्का मकारका स्थानमा अनुस्वार परसवर्ण भयो, 'अलङ्कुमारि' भयो, उक्त वार्तिकले परवल्लिङ्ग-स्त्रीत्व-निषेध भयो, 'अलङ्कुमारि'शब्ददेखि सु आयो, 'अलङ्कुमारिः' सिद्ध भयो। प्रयोग-अलङ्कुमारिर्वरः (कन्याको योग्य वर )

अत एवेति- यहाँ "द्विगुप्राप्तापन्नालं०" यो वार्तिक नै ज्ञापक हुन्छ र अलम् शब्दको चतुर्थ्यन्तसँग समास हुन्छ।

**निष्कौशाम्बिः**– निष्कौशाम्बि यो शब्द "निरादयः कान्ताद्यर्थे०"ले समास भएर सिद्ध भएको रूप हो। यसको प्रक्रिया माथि बताइएको छ। यहाँ पनि "द्विगुप्राप्तापन्नालं०"ले स्त्रीत्व निषेध भयो।

**अर्धर्चा इति**– अर्धर्चआदिगणमा पढिएका शब्द पुंलिङ्गमा र नपुंसक लिङ्गमा होऊन्। "अर्धर्चाः" यहाँको बहुवचनले गणको सङ्केत गर्दछ।

**अर्धर्चः/अर्धर्चम्**– ऋचः अर्धम् (ऋचाको आधा) यस विग्रहमा 'अर्ध+सु+ऋच्+ङस्' यहाँ

एवं ध्वजतीर्थशरीर-मण्डपयूपदेहाङ्कुशपात्रसूत्रादयः। सामान्ये नपुंसकम्। मृदु पचति। प्रातः कमनीयम्॥

**इति तत्पुरुषसमासः ॥३॥**

## अथ बहुव्रीहिसमासः

**९६१. शेषो बहुव्रीहिः २।२।२३॥**

अधिकारोऽयं प्राग्द्वन्द्वात्॥

**९६२. अनेकमन्यपदार्थे २।२।२४॥**

अनेकं प्रथमान्तमन्यस्य पदस्यार्थे वर्तमानं वा समस्यते स बहुव्रीहिः॥

**९६३. सप्तमीविशेषणे बहुव्रीहौ २।२।३५॥**

सप्तम्यन्तं विशेषणं च बहुव्रीहौ पूर्वं स्यात्। अत एव ज्ञापकाद्व्यधिकरणपदो बहुव्रीहिः॥

---

"अर्ध नपुंसकम्"ले समास र "ऋक्पूरब्धूःपथामानक्षे"ले समासान्त अप् प्रत्यय भएर 'अर्धर्च'शब्द बन्यो, यहाँ "परवल्लिङ्गम्०" यो सूत्रले 'अर्धर्च'शब्दको स्त्रीत्व पाएको "अर्धर्चाः पुंसि च"ले बाधेर पुंस्त्व र नपुंसकत्व दुवै भयो, सु आयो, 'अर्धर्चः'/'अर्धर्चम्' सिद्ध भयो। यस्तै प्रकारले ध्वज, तीर्थ, शरीर, यूप, देह, अङ्कुश, पात्र, सूत्र आदिशब्द पनि पुंलिङ्ग र नपुंसकलिङ्गमा रहन्छन्।

अर्धर्च आदि गणमा कोही समस्तशब्द छन्, कोही असमस्तशब्द छन्, समासको प्रसङ्गमा यहाँ उसको चर्चा गरियो।

**सामान्य इति–** लिङ्गको चर्चामा यो पनि विवरण गरिन्छ, सामान्यलिङ्ग अर्थात् क्रियाविशेषणमा र अव्ययको विशेषणमा नपुंसक लिङ्ग हुन्छ। जस्तै-मृदु पचति (कोमल पकाउँछ) प्रातः कमनीयम् (प्रातःकाल सुन्दर छ) आदि।

**तत्पुरुष समास सकियो**

**अब बहुव्रीहि समासको आरम्भ गरिन्छ।**

आचार्य पाणिनिले अष्टाध्यायीसूत्रपाठमा–२।२।१ देखि समास प्रक्रिया आरम्भ गरेर २।२।२२ सम्म विविध समासको निरूपण गरेपछि यो सूत्र आरम्भ गर्नुहुन्छ–

**शेष इति–** बाँकी रहेको समासलाई बहुव्रीहि भनिन्छ। यो बहुव्रीहिसमासको अधिकार "चार्थे द्वन्द्वः" यो सूत्रभन्दा अगाडिको सूत्रसम्म जान्छ। अर्थात् "चार्थे द्वन्द्वः" यो सूत्रदेखि अगाडिका सूत्रले गरिने समास द्वन्द्वसमास हो।

**अनेकेति–** अन्यपदको अर्थमा वर्तमान अनेक प्रथमान्त समर्थको विकल्पले समास गरिन्छ त्यो समास बहुव्रीहिसंज्ञक हुन्छ।

**सप्तमीति–** सप्तम्यन्तपद र विशेषणको बहुव्रीहि समासमा पूर्वप्रयोग होस्।

**अत एवेति–** यही सूत्र ज्ञापकहुनाले बहुव्रीहिसमास व्यधिकरणपद भएको हुन्छ। यो भनाइको आशय हो कि समास गर्ने सूत्रमा अनेक प्रथमान्तको समास होस् भन्ने र यहाँ

**९६४. हलदन्तात्सप्तम्याः संज्ञायाम् ६।३।९॥**

हलन्तादुदन्ताच्च सप्तम्या अलुक्। कण्ठेकालः। प्राप्तमुदकं यं स प्राप्तोदको ग्रामः। ऊढरथोऽनड्वान्। उपहृतपशू रुद्रः।

---

सप्तम्यन्तपद को पूर्वप्रयोग होस् भन्ने यो कुरा मिलेन। अतः प्रथमान्त, प्रथमान्तको मात्र हैन कि "व्यधिकरण अर्थात् प्रथमान्त, प्रथमान्त एवं प्रथमान्त र अन्यविभक्त्यन्त सबैको समास हुन्छ र अन्यपदको अर्थमा वर्तमान अनेक सुबन्त समास गरिन्छन् भन्ने अर्थ "अनेकमन्यपदार्थे" को हुन्छ। "प्रथमानिर्दिष्टं समास उपसर्जनम्" यो सूत्रले प्रथमानिर्दिष्टलाई उपसर्जनसंज्ञा भएर पूर्वप्रयोग अन्यसमासमा हुन्थ्यो, यहाँ समासविधायक सूत्रमा "अनेकम्" यो प्रथमान्तपद छ र प्रथमानिर्दिष्ट सबै पद हुन्छन्, त्यसैले पूर्वप्रयोग नियम उक्त सूत्रबाट हुन नसक्ने हुनाले "सप्तमी विशेषणे बहुव्रीहौ"ले सप्तम्यन्तपद र विशेषणको पूर्वप्रयोग हुने नियम गर्दछ।

**हलन्तादिति**– हलन्त एवं अकारान्त शब्ददेखि पर रहेको सप्तमीको लुक् नहोस्। यो सूत्रपनि व्यधिकरण पद भएको बहुव्रीहिसमास हुन्छ भन्ने ज्ञापक छ।

**कण्ठेकालः(महादेव)**– कण्ठे कालो यस्य (गलामा कालो छ जसको) यस विग्रहमा 'कण्ठ+ङि+काल+सु' यहाँ "सप्तमीविशेषणे०" यो सूत्र ज्ञापक भएकोले "अनेकमन्यपदार्थे०"ले समास भयो "सप्तमीविशेषणे०"ले सप्तम्यन्त 'कण्ठ+ङि'को पूर्वप्रयोग भएपछि कण्ठ शब्द अकारान्त हुनाले "हलदन्तात्०"ले सप्तमीको अलुक् भयो, "सुपो धातु०"ले सुको लुक् 'कण्ठ+इ'मा गुण भयो, 'कण्ठेकाल'शब्द बन्यो, त्यसदेखि सु आयो, 'कण्ठेकालः' सिद्ध भयो। हलन्तदेखि पर रहेको सप्तमी विभक्तिको अलुक् भएको उदाहरण 'त्वचिसारः' हो। प्रथमा विभक्त्यन्तलाई छोडेर द्वितीयादि विभक्त्यन्त अन्य पदको अर्थमा बहुव्रीहिसमास हुन्छ। जस्तै– यम्, येन, यस्मै, यस्य, यस्मिन् आदि अन्य पदहरू लौकिक विग्रहमा राखिन्छन्। यः यस्तो अन्यपद रहन्न।

बहुव्रीहिसमास गरेर निष्पन्न भएका शब्द प्रायः विशेषण हुन्छन्, अतः उनको लिङ्ग वचन विशेष्य अनुसार हुन्छ र लौकिक विग्रहमा अन्यपद राख्दा पनि विशेष्यको लिङ्गवचन अनुसार यत् शब्दको लिङ्गवचन प्रयोग गर्नु पर्दछ। द्वितीयान्त अन्यपदार्थ भएमाः–

**प्राप्तोदको ग्रामः**– प्राप्तम् उदकं यम् (प्राप्त भएको छ जल जसलाई) यस विग्रहमा 'प्राप्त+सु+उदक+सु' यहाँ द्वितीयाविभक्त्यन्त 'यम्' यो अन्य पदको अर्थमा वर्तमान 'प्राप्त+सु+उदक+सु' को "अनेकमन्यपदार्थे"ले समास भयो, "सप्तमी विशेषणे०"ले विशेषण प्राप्त शब्दको पूर्वप्रयोग, विभक्तिलुक्, गुण भयो, 'प्राप्तोदक'शब्द बन्यो, त्यसदखि सु आयो, 'प्राप्तोदकः' सिद्ध भयो। यो ग्रामको (गाउँको) विशेषण हुनाले पुंलिङ्ग भएको हो। यही शब्द स्त्रीलिङ्गी नगरीको विशेषण भयो भने स्त्रीलिङ्ग हुन्छ र 'प्राप्तोदका नगरी' यस्तो हुन्छ। नपुंसकलिङ्गी क्षेत्रशब्दको विशेषण हुँदा 'प्राप्तोदकम क्षेत्रम्' यस्तो हुन्छ।

**तृतीयान्त अन्यपद भएमा-**

**ऊढरथः, अनड्वान्**- (रथ बोकेको गोरु) उढो रथो येन (बाकेको छ रथ जसले) यो लौकिक विग्रहमा 'ऊढ+सु+रथ+सु' यहाँ "अनेकमन्यपदार्थे"ले समास, विशेषण 'ऊढ'शब्दको पूर्वप्रयोग, विभक्तिलुक्, भएर 'ऊढरथ'शब्द बन्यो। यो ऊढरथ शब्द अनड्वान्को विशेषण भएको हुनाले पुंलिंग भयो, त्यसदेखि सु आयो, 'ऊढरथः' सिद्ध भयो।

**चतुर्थ्यन्त अन्यपद भएमा-**

**उपहृतपशू रुद्रः**– (पशुबलि चढाइएका रुद्र) उपहृतः पशुर्यस्मै (उपहार चढाएको छ पशु

उद्धृतौदना स्थाली । पीताम्वरो हरिः । वीरपुरुषको ग्रामः । **वा.**(प्रादिभ्यो धातुजस्य वाच्यो वा चोत्तरपदलोपः) । प्रपतितपर्णः, प्रपर्णः । **वा.**(नञोऽस्त्यर्थानां वाच्यो वा चोत्तरपदलोपः ) । अविद्यमानपुत्रः, अपुत्रः ॥

---

जसलाई) यस विग्रहमा 'उपहृत+सु+पशु+सु' यहाँ पूर्ववत् समासादिप्रक्रिया भयो, 'उपहृतपशु'शब्द बन्यो, यो 'रुद्र'को विशेषण हुनाले पुंलिङ्ग भयो, त्यसदेखि सु आयो, 'उपहृतपशुः' यस्तो रूप बन्यो, यहाँ रूद्रशब्दको रेफ पर हुनाले रेफलोप भएर दीर्घ हुँदा "उपहृवृतपशू रुद्रः" यस्तो भएकोछ ।

**पञ्चम्यन्त अन्यपद भएमा–**

**उद्धृतौदना स्थाली–** (भात निकालिएको कसौंडी) उद्धृतम् ओदनम् यस्याः (झिकिएको छ भात जसबाट) यहाँ पञ्चम्यन्त अन्यपदको अर्थमा वर्तमान अनेक सुबन्त 'उद्धृत+सु+ओदन+सु'को पूर्ववत् समासादि भयो, 'उद्धृतौदन'शब्द बन्यो, यो स्थालीको विशेषण हुनाले स्त्रीत्वात् टाप् प्रत्यय भयो, सु आयो र लोप भयो, 'उद्धृतौदना' सिद्ध भयो

**षष्ठयन्त अन्यपद भएमा–**

**पीताम्बरो हरिः–** (पहेंलो कपडा लगाएका विष्णु) पीतानि अम्बराणि यस्य (पहेंला छन् कपडा जसका) यस विग्रहमा 'पीत+जस्+अम्बर+जस्' यहाँ पूर्ववत्समास आदि भयो, 'पीताम्बर'शब्द बन्यो, यो हरिको विशेषण हुनाले पुंलिङ्गमा सु आउँदा 'पीताम्बरः' सिद्ध भयो । यहाँ हरिशब्द पर हुनाले पीताम्बरस् यहाँ रुत्व,उत्व, गुण भएर 'पीताम्बरो हरिः' यस्तो भएको छ ।

**सप्तम्यन्त अन्यपद भएमा–**

**वीरपुरुषको ग्रामः–** (वीरपुरुषहरू भएको गाउँ) वीराः पुरुषा यस्मिन् (वीर पुरुषहरू छन् जहाँ) यस विग्रहमा 'वीर+जस्+पुरुष+जस्' यहाँ पूर्ववत् समास भयो, र 'वीरपुरुष'शब्द बन्यो, त्यसदेखि वक्ष्यमाणसूत्र "शेषाद्विभाषा"ले कप्प्रत्यय भयो, 'वीरपुरुषक'शब्द बन्यो, यो शब्द 'ग्राम'को विशेषण हुनाले पुंलिङ्ग भयो, सु आयो, 'वीरपुरुषकः' सिद्ध भयो । 'वीरपुरुषकस्+ग्रामः' यहाँ सन्धि हुँदा 'वीरपुरुषको ग्रामः' यस्तो भएको छ ।

**(वा) प्रादिभ्य इति–** प्रादिदेखि पर रहेका धातुजप्रकृतिक सुबन्तसमर्थको, सुबन्तसमर्थले सँग समास होस्, पूर्वपदान्तर्गत धातुज उत्तरपदको विकल्पले लोप पनि होस् भन्नु ।

**प्रपर्णः–** प्रपतितानि पर्णानि यस्मात् (गिरेका छन् पातहरू जसबाट) यस विग्रहमा 'प्रपतित+जस्+पर्ण+जस्' यहाँ प्रादि-प्र-देखि पर रहेको धातुज शब्द प्रकृतिक सुबन्तसमर्थ 'प्रपतित+जस्'को सुबन्तसमर्थ 'पर्ण+जस्'सँग "प्रादिभ्यो धातुजस्य०" यस वार्तिकले समास भयो, विभक्तिको लुक् भयो, पूर्वपदान्तर्गत उत्तरपद पतित शब्दको लोप भयो, 'प्रपर्ण'शब्द बन्यो, त्यसदेखि सु आयो, 'प्रपर्णः' सिद्ध भयो । उत्तरपदको लोप नभएको पक्षमा 'प्रपतितपर्ण'शब्द बन्यो, त्यसदेखि सु आयो, 'प्रपतितपर्णः' यस्तो रूप सिद्ध भयो । यसको प्रयोग–प्रपर्णो वृक्षः, 'प्रपर्णो मन्दारः' आदि हुन्छ । प्रपतित यहाँ "कुगतिप्रादयः"ले समास भएको हुँदा पूर्वपदान्तर्गत उत्तरपद पतित शब्द छ ।

**(वा.) नञ् इति–** नञ्देखि पर रहेको विद्यमानार्थक जो पद, तदन्त सुबन्तसमर्थको, सुबन्तसमर्थले सँग समास होस्, पूर्वपदान्तर्गत उत्तरपदको विकल्पले लोप पनि होस् भन्नु ।

**अपुत्रः–** अविद्यमानः पुत्रो यस्य (छैन छोरो जसको) यस विग्रहमा 'अविद्यमान+सु+पुत्र+सु' यहाँ "नञोऽस्त्यर्थानां०"ले समास, विभक्तिलुक् भयो, पूर्वपदान्तर्गत उत्तरपद विद्यमान शब्दको लोप भयो, 'अपुत्र'शब्द बन्यो, त्यसदेखि सु आयो, 'अपुत्रः' सिद्ध भयो । उत्तरपद लोप नभएको पक्षमा 'अविद्यमानपुत्र' यो शब्द बन्यो, त्यसदेखि सु आयो, 'अविद्यमानपुत्रः' सिद्ध भयो ।

---

**९६५. स्त्रियाः पुंवद्भाषितपुंस्कादनूङ्समानाधिकरणे स्त्रियामपूरणीप्रियादिषु ६।३।३४॥**

उक्तपुंस्कादनूङ्, ऊङोऽभावोऽस्यामिति बहुव्रीहिः । निपातनात्पञ्चम्या अलुक् षष्ठ्याश्च लुक् । तुल्ये प्रवृत्तिनिमित्ते यदुक्तपुंस्कं तस्मात्पर ऊङोऽभावो यत्र तथाभूतस्य स्त्रीवाचकशब्दस्य पुंवाचकस्येव रूपं स्यात्, समानाधिकरणे स्त्रीलिङ्गे उत्तरपदे न तु पूरण्यां प्रियादौ च परतः । गोस्त्रियोरिति ह्रस्वः । चित्रगुः । रूपवद्भार्यः । अनूङ् किम् ? वामोरूभार्यः ॥ पूरण्यां तु–

---

'अविद्यमान' यहाँ पनि 'न' र 'विद्यमान' यी दुई शब्दको नञ्समास भएर अविद्यमान शब्द भएकोले उत्तरपद विद्यमानशब्द छ ।

**स्त्रिया इति–** 'उक्तपुंस्कादनूङ्' अर्थात् 'भाषितपुंस्कादनूङ्' यहाँ भाषितपुंस्कदेखि पर ऊङ्को अभाव छ, जहाँ यस्तो बहुव्रीहिसमास हो । 'भाषितपुंस्कादनूङ्'शब्दमा निपातनात् पञ्चमीको अलुक् भएको छ र षष्ठीको लुक् भएको छ ।

**सूत्रको अर्थ–** प्रवृत्तिनिमित्त तुल्य भएमा जो भाषितपुंस्क शब्द छ, त्यसदेखि पर ऊङ्को अभाव छ जहाँ, त्यस्ता स्त्रीवाचक शब्दको पुंवाचक शब्दको जस्तै रूप होस्, समानाधिकरण स्त्रीलिङ्ग उत्तरपद पर भएमा, पूरणार्थप्रत्ययान्तशब्द र प्रियादिशब्द पर भएमा त नहोस् ।

**गोस्त्रियोरिति–** "गोस्त्रियोरुपसर्जनस्य" ले ह्रस्व हुन्छ ।

**चित्रगुः–** चित्रा गावो यस्य (चित्र विचित्र छन् गाईहरू जसका) यस विग्रहमा 'चित्रा+जस्+गो+जस्' यहाँ षष्ठ्यन्त अन्यपदार्थमा वर्तमान उक्त दुई प्रथमान्तको "अनेकमन्यपदार्थे"ले समास भयो, विशेषण हुनाले चित्राशब्दको पूर्वप्रयोग भयो, अनि "स्त्रियाः पुंवद् भाषित०"ले 'चित्रा' यो शब्दको प्रवृत्तिनिमित्त चित्रत्व, तुल्य भएकोले त्यसदेखि पर ऊङ्को पनि अभाव र समानाधिकरण स्त्रीलिङ्ग उत्तरपद पर भएकोले र पूरणार्थप्रत्ययान्त शब्द र प्रियादिशब्द पर नहुनाले 'चित्रा'शब्दको पुंवद्भाव भयो, 'चित्र+जस्+गो+जस्' भयो, गोशब्दलाई "एकविभक्ति चापूर्व०"ले उपसर्जनसंज्ञा "गोस्त्रियोः०"ले ह्रस्व भयो र गोका ओकारका स्थानमा उकार भयो, गु भयो, 'चित्र+जस्+गु+जस्' भयो, विभक्तिलुक् भयो, 'चित्रगु'शब्द बन्यो, त्यसदेखि सु आयो, 'चित्रगुः' सिद्ध भयो ।

**रूपवद्भार्यः–** रूपवती भार्या यस्य (राम्री छ स्वास्नी जसकी) यस विग्रहमा 'रूपवती+सु+भार्या+सु' यहाँ "अनेकमन्यपदार्थे"ले बहुव्रीहिसमास भयो, विशेषण हुनाले रूपवती शब्दको पूर्वप्रयोग भयो, रूपवती शब्दको पुंलिङ्गमा र स्त्रीलिङ्गमा प्रवृत्तिनिमित्त रूपवत्त्व यौटै हुनाले र त्यसदेखि पर ऊङ्, पूरणार्थप्रत्ययान्त शब्द र प्रियादि शब्द उत्तरपद पनि नभएकोले "स्त्रियाः पुंवत्०"ले रूपवतीको पुंवद्भाव भएर 'रूपवत्' भयो "एकविभक्ति चापूर्व०"ले 'भार्या'लाई उपसर्जनसंज्ञा भयो, "गोस्त्रियोः०"ले भार्या शब्दको ह्रस्व भएर भार्य भयो, विभक्तिलुक् भयो, 'रूपवत्+भार्य' भयो । पदान्तत्वात् रूपवत्मा तकारको जश्त्व भएर दकार भयो, 'रूपवद्भार्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'रूपवद्भार्यः' सिद्ध भयो ।

**अनूङ् किमिति–** सूत्रमा 'अनूङ्' अर्थात् ऊङ्को अभाव छ जहाँ, यो किन भन्नु ? न भन्ने हो भने 'वामोरूभार्यः' यहाँ दोषजाला, अर्थात् 'वामोरू भार्या यस्य' (सुन्दर तिघ्रा भएकी छ श्रीमती जसकी) यस विग्रहमा 'वामोरू+सु+भार्या+सु' यहाँ "अनेकमन्यपदार्थे"ले समास भएपछि 'ऊरु'शब्दको पुंवद्भाव होइजाला र 'वामोरुभार्यः' यो अनिष्टरूप सिद्ध होला, सो नहोस् भनेर अनूङ् भनियो, यहाँ ऊङ् नै छ र पुंवद्भाव भएन, "गोस्त्रियोः०"ले भार्याशब्दको ह्रस्व भयो, विभक्तिलुक् भयो, 'वामोरूभार्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'वामोरूभार्यः' सिद्ध भयो ।

**९६६. अप्पूरणीप्रमाण्योः ५।४।११६॥**

पूरणार्थप्रत्ययान्तं यत्स्त्रीलिङ्गं तदन्तात्प्रमाण्यन्ताच्च बहुव्रीहेरप्स्यात् । कल्याणी पञ्चमी यासां रात्रीणां ताः कल्याणीपञ्चमा रात्रयः । स्त्री प्रमाणी यस्य स स्त्रीप्रमाणः । अप्रियादिषु किम् ? कल्याणीप्रिय इत्यादि ॥

**९६७. बहुव्रीहौ सक्थ्यक्ष्णोः स्वाङ्गात्षच् ५।४।११३॥**

स्वाङ्गवाचिसक्थ्यक्ष्यन्ताद् बहुव्रीहेः षच् स्यात् । दीर्घसक्थः । जलजाक्षी ।

---

**अप्पूरणीति–** पूरणार्थप्रत्ययान्त जो स्त्रीलिङ्ग शब्द छ, त्यो अन्तमा हुने र प्रमाणी शब्द अन्तमा हुने बहुव्रीहिसमासदेखि अप् प्रत्यय होस् ।

**कल्याणीपञ्चमा रात्रयः–** कल्याणी पञ्चमी यासां रात्रीणाम् (कल्याणमय छ पाँचौ रात्रि जुन रात्रिहरूमा) यस विग्रहमा 'कल्याणी+सु+पञ्चमी+सु' यहाँ "अनेकमन्यपदार्थे"ले समास भयो, बहुव्रीहिसंज्ञा भयो पूरणार्थ प्रत्ययान्त पञ्चमी पर हुनाले यहाँ 'कल्याणी' यसको पुंवद्भाव भएन, विभक्तिको लुक् भयो, "अप्पूरणीप्रमाण्योः"ले समासान्त अप् प्रत्यय भयो, "यस्येति च"ले ईकारको लोप भयो, स्त्रीत्वात् "अजाद्यतष्टाप्"ले टाप् प्रत्यय भयो, 'कल्याणीपञ्चमा' शब्द बन्यो, धेरै रात्रि बुझिँदामा प्रथमाविभक्तिको बहुवचन जस् आयो, 'कल्याणीपञ्चमाः' यो रूप सिद्ध भयो ।

**स्त्रीप्रमाणः–** स्त्री प्रमाणी यस्य (स्त्री छ प्रमाण जसकी) यस विग्रहमा 'स्त्री+सु+प्रमाणी+सु' यहाँ "अनेकमन्यपदार्थे"ले बहुव्रीहि समास भयो, विभक्तिलुक् भयो, "अप्पूरणीप्रमाण्योः"ले अप्प्रत्यय, ईकारको लोप भयो, 'स्त्रीप्रमाण'शब्द बन्यो, त्यसदेखि सु आयो, 'स्त्रीप्रमाणः' सिद्ध भयो ।

**अप्रियादिषु किमिति–** "स्त्रियाः पुंवत्" यो सूत्रमा प्रियादि शब्द पर भएमा नहोस् किन भन्नु नभन्ने हो भने, दोषजाला कहाँ ? '**कल्याणीप्रियः**' यहाँ कसरी ? कल्याणी प्रिया यस्य (असल स्त्री छ प्यारी जसकी) यस विग्रहमा 'कल्याणी+सु+प्रिया+सु' यहाँ "अनेकमन्यपदार्थे"ले समास भएपछि, उक्त सूत्र "स्त्रियाः पुंवत्०"ले पुंवद्भाव होला । त्यो नहोस् भनेर 'प्रियादि'शब्द पर भएमा नहोस् भनियो । यहाँ 'प्रिया'शब्द पर छ र पुंवद्भाव भएन, विभक्तिलुक् भयो, 'कल्याणीप्रियः'शब्द बन्यो, त्यसदेखि सु आयो, 'कल्याणीप्रियः' सिद्ध भयो । यहाँ पुंवद्भाव भएको भए 'कल्याणप्रियः' यस्तो अनिष्ट रूप सिद्ध हुन्थ्यो ।

**बहुव्रीहाविति–** स्वाङ्गवाचक सक्थिशब्द र अक्षिशब्द अन्तमा हुने बहुव्रीहिसमासदेखि समासान्त षच्प्रत्यय होस् । यहाँ स्वाङ्ग भन्नाले सामान्यतः प्राणीको अङ्ग बुझिन्छ । यसको विशेष विवरण भाष्यकारले– "स्वाङ्गाच्चोपसर्जनादसंयोगोपधात्" यो सूत्रको व्याख्यानमा "अद्रवं मूर्तिमत्स्वाङ्गम्०" यस कारिकामा गर्नुभएको छ । यहाँ पनि त्यस सूत्रको टीकामा विवरण गरिएको छ ।

**दीर्घसक्थः–** दीर्घे सक्थिनी यस्य (लामा छन् तिघ्रा जसका) यस विग्रहमा 'दीर्घ+औ+सक्थि+औ' यहाँ "अनेकमन्यपदार्थे"ले समास भयो, विभक्तिलुक् भयो, "बहुव्रीहौ सक्थ्यक्ष्णोः"ले षच् प्रत्यय भयो, 'दीर्घसक्थि+अ' भयो, इकार लोप भयो, 'दीर्घसक्थ'शब्द बन्यो, त्यसदेखि पुंलिङ्गमा सु आयो, 'दीर्घसक्थः' सिद्ध भयो । प्रयोग– दीर्घसक्थः पुरुषः (लामा तिग्रा भएको मान्छे)

**जलजाक्षी–** जलजे इव अक्षिणी यस्याः (कमल झैं छन् आँखा जसका) यस विग्रहमा 'जलज+औ+अक्षिन्+औ' यहाँ "अनेकमन्यपदार्थे"ले समास, विभक्तिलुक्, पूर्ववत् षच्प्रत्यय भयो, "नस्तद्धिते"ले टिलोप भयो, 'जलजाक्ष' भयो, स्त्रीत्वात् जलजाक्षशब्ददेखि "षिद्गौरादिभ्यश्च"ले ङीष्प्रत्यय, अकारको लोप भयो, 'जलजाक्षी'शब्द बन्यो, त्यसदेखि सु आयो, लोप भयो, 'जलजाक्षी' सिद्ध भयो ।

---

स्वाङ्गात्किम् ? दीर्घसक्थि शकटम् । स्थूलाक्षा वेणुयष्टिः । अक्ष्णोऽदर्शनादिति वक्ष्यमाणोऽच् ॥

**९६८. द्वित्रिभ्यां ष मूर्ध्नः ५।४।११५॥**

आभ्यां मूर्ध्नः षः स्याद् बहुव्रीहौ । द्विमूर्धः । त्रिमूर्धः ॥

**९६९. अन्तर्बहिर्भ्यां च लोम्नः ५।४।११७॥**

आभ्यां लोम्नोऽप्स्याद् बहुव्रीहौ । अन्तर्लोमः । बहिर्लोमः ॥

---

**स्वाङ्गात्किमिति** – यो सूत्रमा स्वाङ्गवाचक किन भन्नु ? नभन्ने हो भन्ने दीर्घसक्थि शकटम् यहाँ दोष जाला । 'दीर्घसक्थि शकटम्' यहाँ दीर्घे सक्थिनी यस्य (लामा छन् तेर्सा काठ जुन गाडाका) यस विग्रहमा 'दीर्घ+औ+सक्थि+औ' यहाँ पूर्ववत् बहुव्रीहिसमास, विभक्तिलुक्, भएपछि 'दीर्घसक्थि'शब्ददेखि षच् प्रत्यय होला, सो नहोस् भने स्वाङ्गवाचक भन्यौं, यहाँ स्वाङ्गवाचक सक्थि शब्द छैन र षच् प्रत्यय भएन, 'दीर्घसक्थि' यस्तै रह्यो । त्यसदेखि सु आयो, लुक् भयो, 'दीर्घसक्थि' सिद्ध भयो । यो गाडाको विशेषण भएकोले नपुंसकलिङ्गी भएको हो । यहाँ सक्थि शब्द स्वाङ्गवाचक छैन, गाडाका तेर्सा काठलाई स्वाङ्ग भनिदैन । त्यस्तै प्रकारले-

**स्थूलाक्षा वेणुयष्टिः**– (ठूला आँखा भएको बाँसको लट्ठी) यहाँ पनि "स्थूले अक्षिणी यस्याः" यस विग्रहमा 'स्थूल+औ+अक्षि+औ'को समास भएर स्थूलाक्षि भएपछि स्वाङ्गवाचक अक्षि शब्द नहुनाले षच्प्रत्यय भएन । "अक्ष्णोऽदर्शनात्"ले अच् प्रत्यय भयो "यस्येति च"ले इकारलोप भयो, 'स्थूलाक्ष'शब्द भयो, यो 'स्थूलाक्ष'शब्द 'वेणुयष्टि'को विशेषण हुनाले स्त्रीत्वात् टाप् प्रत्यय भयो, सु आयो, 'स्थूलाक्षा' सिद्ध भयो । षच् प्रत्यय भएको भए ङीष्प्रत्यय हुन्थ्यो, अच् प्रत्यय भएकोले ङीष् प्रत्यय भएन, यो पनि स्वाङ्गात् शब्द पढ्नाको फल हो ।

**द्वित्रिभ्यामिति**– द्वि शब्द र त्रि शब्ददेखि पर रहेको मूर्धन् शब्ददेखि समासान्त ष प्रत्यय होस्, बहुव्रीहिसमासमा । षच् प्रत्यय र ष प्रत्ययको स्वरमा भिन्नता हुन्छ ।

**द्विमूर्धः**– द्वौ मूर्धानौ यस्य (दुइटा टाउका छन् जसका) यस विग्रहमा 'द्वि+औ+मूर्धन्+औ' यहाँ "अनेकमन्यपदार्थे"ले बहुव्रीहिसमास, विभक्तिलुक् भएपछि द्विमूर्धन् यसदेखि "द्वित्रिभ्याम्०"ले षप्रत्यय, "नस्तद्धिते"ले टि-अन्-को लोप भयो, 'द्विमूर्ध'शब्द बन्यो, त्यसदेखि सु आयो, 'द्विमूर्धः' सिद्ध भयो ।

**त्रिमूर्धः**– त्रयो मूर्धानो यस्य (तीनवटा छन् टाउका जसका) यस विग्रहमा 'त्रि+जस्+मूधर्न्+जस्' यहाँ पूर्ववत् समास, विभक्तिलुक्, ष प्रत्यय, टिलोप भएर 'त्रिमूर्ध'शब्द बन्यो, त्यसदेखि सु आयो, 'त्रिमूर्धः' सिद्ध भयो ।

**अन्तरिति**– अन्तर् शब्द र बहिस् शब्ददेखि पर रहेका लोमन् शब्ददेखि समासान्त अप् प्रत्यय होस् बहुव्रीहिसमासमा ।

**अन्तर्लोमः**– अन्तः लोमानि यस्य (भित्र छन् रौं जसका) यस विग्रहमा 'अन्तर्+लोमन्+जस्' यहाँ [१३९] "अव्ययानां च" यस वार्तिकले बहुव्रीहि समास भयो, विभक्तिलुक् भयो, 'अन्तर्+लोमन्' भयो, अनि "अन्तर्बहिर्भ्यां च लोम्नः"ले अप्प्रत्यय, टिलोप (अन्को लोप) भयो, 'अन्तर्लोम'शब्द बन्यो, त्यसदेखि सु आयो, 'अन्तर्लोमः' सिद्ध भयो ।

**बहिर्लोमः**– बहिः लोमानि यस्य (बाहिर छन् रौं जसका) यो विग्रहमा 'बहिर्+लोमन्+जस्' यहाँ पूर्ववत् समासादि भएर 'बहिर्लोम'शब्द बन्यो, त्यसदेखि सु आयो, 'बहिर्लोमः' सिद्ध भयो ।

---

१३९ महाभाष्यमा उल्लिखित यो वार्तिक काशिकावृत्तिमा "अनेकमन्यपदार्थे" २।२।२४ यो सूत्रको वृत्तिमा छ ।

**९७०. पादस्य लोपोऽहस्त्यादिभ्यः ५।४।१३८॥**

हस्त्यादिवर्जितादुपमानात्परस्य पादशब्दस्य लोपः स्याद् बहुव्रीहौ। व्याघ्रस्येव पादावस्य व्याघ्रपात्। अहस्त्यादिभ्यः किम्? हस्तिपादः। कुसूलपादः॥

**९७१. संख्यासुपूर्वस्य ५।४।१४०॥**

पादस्य लोपः स्यात्समासान्तो बहुव्रीहौ। द्विपात्। सुपात्॥

---

**पादस्येति–** हस्त्यादि शब्ददेखि भिन्न उपमानवाचक शब्ददेखि पर रहेका पाद शब्दको समासान्त लोप होस्, बहुव्रीहि समासमा।

**व्याघ्रपात्/द्–** व्याघ्रस्य इव पादौ अस्य (बाघका जस्ता छन् पाइला यसका) यो विग्रहमा [१४०] व्याघ्र+औ+पाद+औ' यहाँ "अनेकमन्यपदार्थे"ले बहुव्रीहिसमास भयो, विभक्तिलुक् भयो, 'व्याघ्रपाद' भयो, "पादस्य लोपो०"ले पादशब्दका अकारको लोप भयो, 'व्याघ्रपाद'शब्द बन्यो, त्यसदेखि सु आयो, 'व्याघ्रपात्/द्' सिद्ध भयो। यहाँ "परस्य" यो शब्दको उचारण गरेर विधान गरने लोपकार्यमा "आदेः परस्य" लाग्दैन, "अलोऽन्त्यस्य" नै लाग्छ, अर्कोकुरा, "समासान्ताः" यो सूत्रको अधिकार पनि छ। यो लोप समासान्तविधि भएकोले 'व्याघ्रपाद'शब्दमा "शेषाद् विभाषा"ले कप्प्रत्यय पनि हुदैन। किनकि त्यससूत्रमा अनुक्तसमासान्त बहुव्रीहिसमासदेखि मात्र कप्प्रत्यय होस् भनेको छ।

यहाँ 'व्याघ्रपादौ इव पादौ अस्य', यस्तो विग्रह अथवा 'व्याघ्रस्य पादौ इव पादौ अस्य' यस्तो विग्रह गरेमा [१४१] सप्तम्युपमानपूर्वपदस्योत्तरपदलोपश्च" यो वार्तिकले समास हुन्छ र पूर्वपद 'व्याघ्रपाद'शब्दको उत्तरपद 'पाद'शब्दको लोप हुन्छ।

**अहस्त्यादिभ्यः किमिति–** हस्तिआदि शब्द भिन्न उपमानदेखि पररहेको किनभन्नु? नभन्ने हो भने, हस्तिन इव पादौ यस्य (हात्तिका जस्ता छन् पाउ जस्का) यस विग्रहमा पूर्ववत् समास भएर बनेको 'हस्तिपाद'शब्दमा र कुसूले इव पादौ यस्य (भकारी जस्ता छन् पाउ जसका) यस्तो विग्रहमा पूर्ववत् समास भएर बनेको 'कुसूलपाद'शब्दमा समासान्तलोप होला र 'हस्तिपाद्', 'कुशुलपाद्' यस्तो अनिष्ट रूप होला, सो नहोस् भनेर हस्तिआदि शब्द भिन्न उपमानदेखि पर रहेका भनियो, यहाँ हस्तिआदि शब्द भिन्न उपमान छैनन् हस्तिआदिशब्द नै उपमान छन् र 'हस्तिपाद', 'कुसूलपाद' यहाँ समासान्त लोप भएन, अकारान्त रह्यो, त्यसदेखि सु आयो, 'हस्तिपादः', 'कुसूलपादः' सिद्ध भयो।

**सङ्ख्येति–** सङ्ख्यावाचक शब्द र सु शब्द पूर्वमा हुने पाद शब्दको लोप होस्, बहुव्रीहिसमासमा।

**द्विपात्/द्–** द्वौ पादौ यस्य (दुई छन् पाउ जसका) यो विग्रहमा 'द्वि+औ+पाद+औ' यहाँ षष्ठचन्त अन्यपदका अर्थमा "अनेकमन्यपदार्थे"ले बहुव्रीहिसमास, विभक्तिलुक् भयो 'द्विपाद' भयो, "संख्यासुपूर्वस्य"ले "अलोन्त्यस्य" लाएर पाद शब्दका अकारको लोप भयो, 'द्विपाद्'शब्द बन्यो, त्यसदेखि सु आयो, "हलङ्याब्भ्यो०"ले लोप भयो, जश्त्व, चर्त्व भयो, 'द्विपात्/द्' सिद्ध भयो।

**सुपात्/द्–** शोभनौ पादौ यस्य (राम्रा छन् पाउ जसका) यस विग्रहमा 'सु+पाद+औ' यहाँ पूर्ववत् समास भयो, विभक्तिलुक् भयो, सुपूर्वमा हुने बहुव्रीहिसमास हुनाले पूर्ववत् 'सुपाद'का अकारको लोप भयो, 'सुपाद्'शब्द बन्यो, त्यसदेखि सु आयो, लोप भयो, जश्त्व चर्त्व भयो, 'सुपात्/द्' सिद्ध भयो।

---

१४० अलौकिक विग्रहमा रहेको व्याघ्रशब्दको व्याघ्रपादमा लक्षणा हुन्छ।

१४१ यो वार्तिकपनि महाभाष्यबाट उद्धृत हो। "अनेकमन्यपदार्थे" को वृत्तिमा काशिकामा छ।

**९७२. उद्विभ्यां काकुदस्य ५।४।१४८॥**

लोपः स्यात् । उत्काकुत् । विकाकुत् ॥

**९७३. पूर्णाद्विभाषा ५।४।१४९॥**

पूर्णकाकुत् । पूर्णकाकुदः ॥

**९७४. सुहृद्दुर्हृदौ मित्रामित्रयोः ५।४।१५०॥**

सुदुर्भ्यां हृदयस्य हृद्भावो निपात्यते । सुहृन्मित्रम् । दुर्हृदमित्रः ॥

**९७५. उरःप्रभृतिभ्यः कप् ५।४।१५१॥**

**९७६. सोऽपदादौ ८।३।३८॥**

पाश-कल्प-क-काम्येषु विसर्गस्य सः ॥

---

**उद्विभ्यामिति–** उद् शब्द र वि शब्ददेखि पर रहेको काकुद शब्दको समासान्त लोप होस् बहुव्रीहि समासमा ।

**उत्काकुत्/द्–** उन्नतं काकुदं यस्य (उचो छ च्यापु जसको) यो विग्रहमा 'उन्नत+सु+काकुद+सु' यहाँ "प्रादिभ्यो धातुजस्य०"ले समास उत्तरपदलोप, विभक्तिलुक् भयो, 'उत्काकुद' भयो, यहाँ "उद्विभ्यां काकुदस्य"ले समासान्त लोप हुदा काकुदका अकारको लोप भयो, 'उत्काकुद्'शब्द बन्यो, त्यसदेखि सु आयो, लोप भयो, जश्त्व, चर्त्व भयो, 'उत्काकुत्/द्' सिद्ध भयो ।

**विकाकुत्/द्–** विगतं काकुदं यस्य (नराम्रो छ तालु जसको) यो विग्रहमा 'विगत+सु+काकुद+सु' यहाँ पूर्ववत् समास, समासान्त लोप भएर, 'विकाकुद्'शब्द बन्यो, त्यसदेखि सु आयो र पूर्ववत् 'विकाकुत्/द्' सिद्ध भयो ।

**पूर्णादिति–** पूर्ण शब्ददेखि पर रहेका काकुद शब्दको विकल्पले समासान्त लोप होस् बहुव्रीहि समासमा ।

**पूर्णकाकुत्/द्/पूर्णकाकुदः–** पूर्णं काकुदम् यस्य (पूर्ण छ तालु जसको) भन्दा 'पूर्ण+सु+काकुद+सु' यहाँ पूर्ववत् समास भएर 'पूर्णकाकुद' भएपछि काकुदका अकारको "पूर्णाद् विभाषा"ले लोप भएर 'पूर्णकाकुद्'शब्द बन्यो, त्यसदेखि सु आयो, पूर्ववत् 'पूर्णकाकुत्/द्' सिद्ध भयो । लोप नभएको पक्षमा 'पूर्णकाकुद' यस्तै छ, त्यसदेखि सु आयो, 'पुर्णकाकुदः' सिद्ध भयो ।

**सुहृदिति–** मित्र र शत्रु बुझिँदामा सु शब्द दुर् शब्द देखि पर रहेका हृदय शब्दका स्थानमा हृद् आदेश निपातन गरिन्छ ।

**सुहृद्–** सुष्ठु हृदयं यस्य (राम्रो छ मन जसको) भन्दा 'सु+हृदय+सु' यहाँ "अव्ययानां च"ले समास भएपछि "सुहृद्दुर्हृदौ०" यस सूत्रले हृदय शब्दका स्थानमा हृद्आदेश निपातन भयो, 'सुहृद'शब्द बन्यो, त्यसदेखि सु आयो, र सुको लोप जश्त्व चर्त्व भयो, 'सुहृत्/द्' सिद्ध भयो ।

**दुर्हृद्–** दुष्ठु हृदयं यस्य (खराब छ मन जसको) भन्दा 'दुर्+हृदय+सु' यहाँ पूर्ववत् समास, हृदयका स्थानमा हृद्आदेश भयो, 'दुर्हृद'शब्द बन्यो, त्यसदेखि सु आयो, पूर्ववत् कार्य भयो, 'दुर्हृत्/द्' सिद्ध भयो ।

**सुहृदिति–** सुहृद् भनेको मित्र हो । दुर्हृद् भनेको शत्रु हो ।

**उर इति–** उरस् आदि गणमा पढिएका शब्ददेखि समासान्त कप् प्रत्यय होस्, बहुव्रीहिसमासमा । पकारको इत्संज्ञा, लोप हुन्छ ।

**सोऽपदेति–** पाशप् प्रत्यय, कल्पप् प्रत्यय, क प्रत्यय, काम्यच् प्रत्यय पर भएमा विसर्गका स्थानमा दन्त्य सकार होस् ।

**९७७. कस्कादिषु च ८।३।४८॥**

एष्विण उत्तरस्य विसर्गस्य षोऽन्यस्य तु सः। इति सः। व्यूढोरस्कः॥

**९७८. इणः षः ८।३।३९॥**

इण उत्तरस्य विसर्गस्य षः पाश-कल्प-क-काम्येषु परेषु। प्रियसर्पिष्कः॥

**९७९. निष्ठा २।२।३६॥**

निष्ठान्तं बहुव्रीहौ पूर्वं स्यात्। युक्तयोगः॥

**९८०. शेषाद्विभाषा ५।४।१५४॥**

अनुक्तसमासान्ताद् बहुव्रीहेः कब्वा। महायशस्कः, महायशाः॥

**इति बहुव्रीहिसमासः ॥४॥**

---

**कस्कादिष्विति**– कस्कादिगणमा इण्देखि पर रहेको विसर्गका स्थानमा मूर्धन्य षकार होस्, अन्यविसर्गका स्थानमा दन्त्य सकार होस्।

**व्यूढोरस्कः**– व्यूढम् उरो यस्य (बलियो छ छाती जसको) यो विग्रहमा 'व्यूढ+सु+उरस्+सु' यहाँ "अनेकमन्यपदार्थे"ले समास, विभक्तिलुक् भएपछि "उरः प्रभृतिभ्यः०"ले कप्प्रत्यय भयो, 'व्यूढोरस्+क' भयो, यहाँ सकारका स्थानमा रुत्व, विसर्ग भएपछि 'व्यूढोरः+क' यहाँ "कस्कादिषु च"ले विसर्गका स्थानमा सकार भयो, 'व्यूढोरस्क'शब्द बन्यो, त्यसदेखि सु आयो, 'व्यूढोरस्कः' सिद्ध भयो।

**इण इति**– इण् प्रत्याहारदेखि पर रहेका विसर्गका स्थानमा मूर्धन्य षकार आदेश होस् पाश, कल्प, क, काम्य प्रत्यय पर भएमा।

**प्रियसर्पिष्कः**– प्रियं सर्पिर्यस्य (प्यारो छ घिऊ जसको) यो विग्रहमा 'प्रिय+सु+सर्पिष्+सु' यहाँ समास, विभक्तिलुक् भएपछि "उरःप्रभृतिभ्यः०"ले कप् प्रत्यय भयो, 'प्रियसर्पिष्क' भयो, यहाँ षत्व असिद्ध हुनाले 'सर्पिष्का षकारको रुत्व, विसर्ग भयो, इण्देखि पर रहेको हुनाले त्यो विसर्गका स्थानमा "इणः षः"ले मूर्धन्य षकार भयो, 'प्रियसर्पिष्क'शब्द बन्यो, त्यसदेखि सु आयो, 'प्रियसर्पिष्कः' सिद्ध भयो।

**निष्ठेति**– निष्ठा प्रत्यय अन्तमा हुने शब्दको बहुव्रीहिसमासमा पूर्वप्रयोग होस्।

**युक्तयोगः**– युक्तो योगो येन (स्वीकार गरिएको छ योग जसले) यो विग्रहमा 'युक्त+सु+योग+सु' यहाँ "अनेकमन्यपदार्थे"ले समास भयो, "निष्ठा" यो सूत्रले 'युक्त+सु'को पूर्वप्रयोग, विभक्तिलुक् भयो, 'युक्तयोग'शब्द बन्यो, त्यसदेखि सु आयो, 'युक्तयोगः' सिद्ध भयो।

**शेषादिति**– समासान्तकार्य न कहिएका बहुव्रीहिसमासदेखि कप् प्रत्यय विकल्पले होस्।

**महायशस्कः**– महत् यशो यस्य (ठूलो छ कीर्ति जसको) भन्दा 'महत्+सु+यशस्+सु' यहाँ "अनेकमन्यपदार्थे"ले समास भयो, विभक्तिलुक् भयो, "आन्महतः०"ले महत् शब्दका तकारका स्थानमा आकार भयो, दीर्घ भयो, 'महायशस्' भयो, अरू समासान्त कार्य केही नकहिएको हुनाले यहाँ "शेषाद् विभाषा"ले वैकल्पिक कप् प्रत्यय भयो, 'महायशस्क' त्यसदेखि सु आयो, 'महायशस्कः' सिद्ध भयो। कप् प्रत्यय नभएको पक्षमा 'महायशस्' यस्तै छ, त्यसदेखि सु आयो, 'महायशाः' सिद्ध भयो।

**बहुव्रीहि समास सकियो**

## अथ द्वन्द्वसमासः

९८१. **चार्थे द्वन्द्वः २।२।२९॥**

अनेकं सुबन्तं चार्थे वर्तमानं वा समस्यते स द्वन्द्वः। समुच्चयान्वाचयेतरेतरयोगसमाहाराश्चार्थाः। तत्र 'ईश्वरं गुरुं च भजस्व' इति परस्परनिरपेक्षस्यानेकस्यैकस्मिन्नन्वयः समुच्चयः। 'भिक्षामट गां चानय' इत्यन्यतरस्यानुषङ्गिकत्वेनान्वयोऽन्वाचयः। अनयोरसामर्थ्यात्समासो न। 'धवखदिरौ छिन्धि' इति मिलितानामन्वय इतरेतरयोगः। 'संज्ञापरिभाषम्' इति समूहः समाहारः॥

---

**अब द्वन्द्व समास आरम्भ गरिन्छ-**

**चार्थ इति-** 'च'शब्दको अर्थमा वर्तमान अनेक सुबन्तहरूको समास गरिन्छ, त्यो समासको द्वन्द्वसंज्ञा हुन्छ।

**समुच्चयेति-** समुच्चय, अन्वाचय, इतरेतरयोग, समाहार यी चार 'च'शब्दका अर्थ छन्।

**१. समुच्चय अर्थ-**

**तत्रेति-** परस्परनिरपेक्ष अनेक पदार्थको एकपदार्थमा अन्वय हुनु समुच्चय हो, जस्तै- 'ईश्वरं गुरु च भजस्व' (ईश्वरलाई र गुरुलाई सेवा गर) यो वाक्यमा ईश्वर र गुरु दुवै परस्पर निरपेक्ष छन्, यौटाले अर्काको अपेक्षा राख्दैनन्। दुवैको स्वतन्त्ररूपले भजन क्रियामा अन्वय हुन्छ। अतः यहाँ 'च'शब्दको अर्थ 'समुच्चय' छ।

**२. अन्वाचय अर्थ-**

**भिक्षामटेति-** जब समुच्चीयमान दुई पदार्थमा यौटाको आनुषङ्गिक रूपमा अन्वय हुन्छ त्यहाँ अन्वाचय अर्थ हुन्छ। जस्तै 'भिक्षामट गां च आनय' भिक्षाका निमित्त जाऊ गाई पनि ल्याऊ। यहाँ भिक्षाटन प्रधानकार्य हो। भिक्षा निमित्त घुम्दा गाई भेटाए गाई पनि लिएर आउनु गौणकार्य हो। यो कार्य आनुषङ्गिक छ किनकि भिक्षाका निमित्त घुम्दा हराएको गाई भेटिए ल्याउनु नभेटिए त्यस कार्यमा नलाग्नु भन्ने अर्थ यहाँ छ। त्यसैले यहाँ अन्वाचय अर्थ बुझिन्छ।

**अनयोरिति-** समुच्चय र अन्वाचय अर्थ भएका यी दुई पदको एकार्थीभावरूप सामर्थ्य नभएकोले समास हुदैन।

**३. इतरेतरयोग अर्थ-**

**धवखदिराविति-** जब दुवै पदार्थ मिलेर परस्परमा अन्वित हुन्छन्, त्यहाँ इतरेतरयोग हुन्छ। जस्तै- धवखदिरौ छिन्धि (धाइरो र खयर काट) यहाँ धाइरो र खयर दुवै मिलेर काट्ने क्रियामा अन्वित हुन्छन् र यहाँ 'च'शब्दको अर्थ इतरेतरयोग हुन्छ।

**४. समाहार अर्थ-**

**संज्ञापरिभाषमिति-** जहाँ पदार्थको अलग-अलग अन्वय हुदैन। पदार्थसमूहको एकै पटक अन्वय हुन्छ त्यो समाहारअर्थ हो। जस्तै- संज्ञापरिभाषम् (संज्ञा र परिभाषाको एकता) यहाँ संज्ञा

**९८२. राजदन्तादिषु परम् २।२।३१॥**

एषु पूर्वप्रयोगार्हं परं स्यात् । दन्तानां राजानो राजदन्ताः । **वा.**(धर्मादिष्वनियमः) । अर्थधर्मौ । धर्मार्थावित्यादि ॥

**९८३. द्वन्द्वे घि २ । २ । ३२ ॥**

द्वन्द्वे घिसंज्ञं पूर्वं स्यात् । हरिश्च हरश्च हरिहरौ ॥

---

र परिभाषाको यौटा समूह भएको बुझिएकोले यहाँ 'च'शब्दको अर्थ समाहार हुन्छ । इतरेतरयोग र समाहार अर्थमा एकार्थीभावरूप सामर्थ्य हुन्छ र समास हुन्छ । यसैकारण 'धवखदिरौ' यहाँ र 'संज्ञापरिभाषम्' यहाँ समास भएको छ ।

**समासमा** कुन पदको पूर्वप्रयोग गर्नुपर्छ, त्यसको नियम गर्ने दुई सूत्रमाथि बताइएको छ । एक- "प्रथमानिर्दिष्टं समास उपसर्जनम्" अर्को सूत्र- "सप्तमी विशेषणे बहुव्रीहौ" ती दुई सूत्रमध्ये "सप्तमी विशेषणे बहुव्रीहौ"ले बहुव्रीहिसमासमा मात्र यो नियम गर्छ । "प्रथमानिर्दिष्टम्०" यो सूत्रले समासविधायकशास्त्रमा प्रथमान्तले देखाइएको पदको पूर्वप्रयोग होस् भन्छ । द्वन्द्वसमासमा समासविधायक सूत्र "चार्थे द्वन्द्वः"हो । त्यसमा प्रथमान्तपद 'अनेकम्' यो छ । यसले समास गरिने सबै पदलाई निर्देशन गर्छ । अतः द्वन्द्व समासमा त्यस सूत्रले पूर्वप्रयोग हुने शब्दको नियम हुन नसक्ने हुनाले "द्वन्द्वे घि","अजाद्यदन्तम्" आदि सूत्रहरू बताइएको छ । ती सबै पूर्वप्रयोग नियामक सूत्रहरूको अपवादसूत्र "राजदन्तादिषु परम्" हो । राजदन्तादि गण भित्र विभिन्न समास भएका शब्दहरू छन् ।

**राजदन्तादिष्विति-** राजदन्तादिगणमा पढिएका शब्दमा पूर्वप्रयोग गर्न योग्य शब्दको परप्रयोग हुन्छ ।

**राजदन्तः-** दन्तानां राजा यो विग्रहमा 'दन्त+आम्+राजन्+सु' यहाँ "षष्ठी" यो सूत्रले तत्पुरुषसमास भयो, विभक्तिलुक् भयो, समासविधायकशास्त्रमा प्रथमान्तपदनिर्दिष्टं हुनाले "प्रथमानिर्दिष्टं०" यो सूत्रलाएर दन्त शब्दको पूर्वप्रयोग पाएमा "राजदन्तादिषु परम्"ले दन्त शब्दको परप्रयोग भयो र 'राजदन्त'शब्द बन्यो, त्यसदेखि सु आयो, 'राजदन्तः' सिद्ध भयो । यो शब्द र सूत्र तत्पुरुषसमासमा दिनुपर्ने हो । पूर्वप्रयोग प्रसङ्ग यहाँ चलेको र यो राजदन्तादि गण भित्र द्वन्द्वसमास भएर बनेका शब्द पनि पर्ने हुनाले यहाँ दिइएको हो ।

**(वा.)धर्मादिष्विति-** धर्म आदि शब्दमा नियम छैन, इच्छानुसार कहिले कुन कहिले कुनको पूर्वप्रयोग हुन्छ । इच्छाअनुसार प्रयोग गर्नको निमित्त यस वार्तिकले भनिरहनु पर्ने थिएन भन्नुको कारण-जस्तो धर्म अर्थ यी दुई मध्ये अर्थशब्द अजादि र अदन्त हुनाले "अजाद्यन्तम्" यो वक्ष्यमाण सूत्रद्वारा अर्थ शब्दको पूर्वप्रयोग पाउँछ, त्यसको अपवाद यो वार्तिक हो ।

**धर्मार्थौ/अर्थधर्मौ-** धर्मश्च अर्थश्च यो विग्रहमा 'धर्म+सु+अर्थ+सु' यहाँ इतरेतर योग अर्थमा "चार्थे द्वन्द्वः"ले समास भयो विभक्तिलुक् भयो । "अजाद्यदन्तम्"लाई बाधेर "धर्मदिष्वनियमः"ले धर्म शब्दको पूर्वप्रयोग भयो, धर्मार्थ शब्द बन्यो, धर्म र अर्थ दुवैलाई कहँदा द्वित्वसङ्ख्याविशिष्ट अर्थ बुझिएकोले धर्मार्थ शब्ददेखि औ आयो, 'धर्मार्थौ' सिद्ध भयो । अर्थ शब्दको पूर्वप्रयोग भएमा 'अर्थधर्म'शब्द बन्यो, त्यसदेखि पूर्ववत् औ आयो, 'अर्थधर्मौ' सिद्ध भयो । यहाँ समस्त पदार्थ अर्थ धर्म दुवै बुझिएकोले द्वित्व संख्या विशिष्ट रूप अर्थमा 'धर्मार्थ' शब्द र 'अर्थधर्म' शब्ददेखि द्विवचन भयो ।

**द्वन्द्व इति-** द्वन्द्व समासमा घिसंज्ञक शब्दको पूर्वप्रयोग होस् ।

**हरिहरौ-** हरिश्च हरश्च (विष्णु र शिव) यो विग्रहमा 'हरि+सु+हर+सु' यहाँ "चार्थे द्वन्द्वः"ले पूर्ववत् समासआदि कार्य भयो, घिसंज्ञक हुनाले "द्वन्द्वे घि" यस सूत्रले हरि शब्दको

**९८४. अजाद्यदन्तम् २।२।३३॥**

द्वन्द्वे पूर्वं स्यात्। ईशकृष्णौ ॥

**९८५. अल्पाच्तरम् २।२।३४॥**

शिवकेशवौ ॥

**९८६. पिता मात्रा १।२।७०॥**

मात्रा सहोक्तौ पिता वा शिष्यते। माता च पिता च पितरौ, मातापितरौ वा ॥

**९८७. द्वन्द्वश्च प्राणितूर्यसेनाङ्गानाम् २।४।२॥**

एषां द्वन्द्व एकवत्।

---

पूर्वप्रयोग भयो, 'हरिहर'शब्द बन्यो, त्यसदेखि औ आयो, 'हरिहरौ' सिद्ध भयो।

**अजाद्यदन्तम्**– द्वन्द्वसमासमा अच्आदिमा हुने र ह्रस्व अकार अन्तमा हुने शब्दको पूर्वप्रयोग होस्।

**ईशकृष्णौ**– ईशश्च कृष्णश्च (शिव र कृष्ण) यस विग्रहमा 'ईश+सु+कृष्ण+सु' को पूर्ववत् समास भयो, अजादि र ह्रस्व अकारान्त हुनाले, "अजाद्यदन्तम्" लगाएर ईशशब्दको पूर्वप्रयोग भयो, 'ईश कृष्ण'शब्द बन्यो, त्यसदेखि औ आयो 'इश कृष्णौ' सिद्ध भयो।

**अल्पाजिति**– द्वन्द्वसमासमा थोरै अच् हुने शब्दको पूर्वप्रयोग होस्।

**शिवकेशवौ**– शिवश्च केशवश्च (शिव र विष्णु) भन्दा यहाँ 'शिव+सु+केशव+सु' को पूर्ववत् समास भयो, केशव शब्दमा भन्दा शिव शब्दमा थोरै अच् हुनाले "अल्पाच्तरम्" यो सूत्र लगाएर त्यसको पूर्वप्रयोग भयो, 'शिवकेशव'शब्द बन्यो, त्यसदेखि औ आयो, 'शिवकेशवौ' सिद्ध भयो।

यहाँ सामान्यतः पूर्वप्रयोग गर्ने सूत्रमात्र देखाइयो। यसमा "लघ्वक्षरं पूर्वम्", "अभ्यर्हितं च" आदि वार्तिक पनि छन्। सिद्धान्तकौमुदीबाट जान्नु पर्दछ। जहाँ पूर्वप्रयोग गर्ने नियम पाइँदैन त्यहाँ इच्छा अनुसार पूर्वप्रयोग गर्नुपर्छ।

**पितेति**– मातृ शब्दका साथ पितृ शब्दको सहोक्तिभएमा पितृ शब्द विकल्पले शेष रहन्छ मातृ शब्द लुप्त हुन्छ।

**पितरौ/मातापितरौ**– माता च पिता च (आमा र बाबु) यो विग्रहमा 'मातृ+सु+पितृ+सु' यहाँ "चार्थे द्वन्द्वः"ले समास भयो, विभक्तिलुक् भयो, "पिता मात्रा"ले विकल्पले मातृशब्दको लोप पितृ शब्दको शेष गर्‍यो, पितृ शब्दमात्र बाँकी रह्यो, "यः शिष्यते स लुप्यमानार्थाभिधायी" यो परिभाषाले पितृशब्दले नै मातृ शब्दको समेत अर्थ बुझायो र पितृ शब्ददेखि प्रथमाको द्विवचन औ आयो, 'पितरौ' सिद्ध भयो। मातृ शब्दको लोप नभएको पक्षमा [१४२]"अभ्यर्हितं च" यस वार्तिकले मातृ शब्दको पूर्वप्रयोग भयो र "आनङ् ऋतो द्वन्द्वे"ले मातृ शब्दका ऋकारका स्थानमा आनङ् आदेश भएर 'मातापितृ'शब्द बन्यो, त्यसदेखि औ आयो, 'मातापितरौ' सिद्ध भयो। द्वन्द्वसमासभित्र पर्ने एकशेष प्रकरणछुट्टै छ। यो लघुकौमुदीमा लघुत्वको अपेक्षाले एउटा सूत्रमात्र देखाई दिग्दर्शन गरेर एकशेष समासलाई द्वन्द्वसमास भित्र नै अन्तर्भाव गरियो। "सरूपाणामेकशेष एकविभक्तौ" अजन्त पुंलिङ्गमा दिएको छ। "वृद्धोयूना०" आदि धेरै सूत्र एकशेषप्रकरणमा छन्। सिद्धान्तकौमुदीबाट याद गर्नुपर्दछ।

**द्वन्द्वश्चेति**– प्राणिवाचक, वाद्यवाचक र सेनाङ्गवाचक शब्दको द्वन्द्वसमासमा एकवद्-भाव

---

१४२ "पितुर्दशगुणं माता गौरवेणातिरिच्यते" यो स्मृतिको वचन प्रमाण छ।

पाणिपादम् । मादर्ङ्गिकवैणविकम् । रथिकाश्वारोहम् ॥

९८८. **द्वन्द्वाच्चुदषहान्तात्समाहारे ५।४।१०६॥**

चवर्गान्ताद्दषहान्ताच्च द्वन्द्वाट्टच् स्यात्समाहारे ।

---

होस् । एकवद्भाव होस् भन्नको तात्पर्य समाहार अर्थमा नै यिनीहरूको द्वन्द्वसमास होस् भन्ने हो । अतः यिनीहरूको समाहार अर्थमा द्वन्द्वसमास हुन्छ । समाहार अर्थमा द्वन्द्व समास गरे पछि "स नपुंसकम्" उक्त सूत्रले नपुंसक लिङ्ग पनि हुन्छ । प्राणीका अङ्ग हात, पाउ आदि हुन् । बाजाका अङ्ग मादल, बाँसुरी आदि बजाउने व्यक्ति हुन् । सेनाका अङ्ग रथी घोडसवार पैदल आदि हुन् ।

**पाणिपादम्**– पाणी च पादौ च एतयोः समाहार (हात र पाउ यी दुईको समाहार) यस विग्रहमा 'पाणि+औ+पाद+औ' यहाँ "चार्थे द्वन्द्वः"ले समास भयो, अभ्यर्हित (पूज्य) हुनाले पाणि शब्दको पूर्वप्रयोग भयो, 'पाणिपाद' शब्द बन्यो, "स नपुंसकम्"ले नपुंसकत्व र "द्वन्द्वश्च प्राणितूर्य०"ले एकवद्भाव भयो, सु आयो, 'पाणिपादम्' सिद्ध भयो । यस्तै अम्मा पनि पाणिपादम् हुन्छ । अरू विभक्तिमा पाणिपादेन, पाणिपादाय आदि रूप हुन्छन् ।

**मार्दङ्गिकवैणविकम्**– मार्दङ्गिकाश्च वैणविकाश्च एतेषां समाहारः (मादल बजाउनेहरू र बाँसुरी बजाउनेहरू यिनीहरूको समाहार) भन्दा 'मार्दङ्गिक+जस्+वैणविक+जस्' यहाँ "चार्थे द्वन्द्वः"ले समास भयो, 'मार्दङ्गिकवैणविक' शब्द बन्यो । समाहार अर्थमा गरिएकोले नपुंसक लिङ्ग र एकवद्भाव भएपछि सु आयो, अम् भयो, 'मार्दङ्गिकवैणविकम्' भयो । मार्दङ्गिकशब्द र वैणविक शब्दमा पूर्वप्रयोगनियामक सूत्र नहुनाले 'वैणविकमार्दङ्गिकम्' यस्तो रूप पनि हुन्छ ।

**रथिकाश्वारोहम्**– रथिकाश्च अश्वारोहाश्च (रथी र घोडसवार) यस विग्रहमा 'रथिक+जस्+अश्वारोह+जस्'को समास भयो थोरै अच्भएको हुनाले रथिकशब्दको पूर्वप्रयोग भयो, 'रथिकाश्वारोह' शब्द बन्यो, नपुंसकत्व र एकवद्भाव भएकोले सु आयो, अम् भयो, 'रथिकाश्वारोहम्' सिद्ध भयो ।

**द्वन्द्वाच्चुदेति**– चवर्गान्त शब्द र दकार, षकार र हकार अन्तमा हुने शब्ददेखि द्वन्द्व समासमा समासान्त टच् प्रत्यय होस समाहार अर्थमा ।

वाक्त्वचम्– वाक् च त्वक् च एतयोः समाहारः (वाग् इन्द्रिय र त्वग् इन्द्रियको समाहार एकठ्ठा) यस विग्रहमा 'वाच्+सु+त्वच्+सु' यहाँ पूर्ववत् समास भयो, वाच्का चकारको कुत्व भयो । 'वाक्त्वच्' भएपछि प्रकृत सूत्र "द्वन्द्वाच्चुद०" ले चवर्गान्त त्वच शब्द हुनाले समासान्त टच् प्रत्यय भयो, 'वाक्त्वच'शब्द बन्यो, त्यसको नपुंसकत्व एकवद्भाव भयो, सु आयो, 'वाक्त्वचम्' सिद्ध भयो ।

**त्वक्स्रजम्**– त्वक् च स्रक् च एतयोः समाहारः (छाला र माला यी दुईको समाहार) यस विग्रहमा 'त्वच्+सु+स्रज्+सु'को द्वन्द्वसमास भयो, 'त्वच् स्रज्' भयो, चवर्गान्त द्वन्द्वसमास हुनाले उक्त सूत्रले टच् प्रत्यय भयो, त्वच्का चकारको कुत्व भएर ककार भयो, 'त्वक्स्रज' शब्द बन्यो, नपुंसकत्व र एकवद्भाव भयो, त्यसदेखि सु आयो, 'त्वक्स्रजम्' सिद्ध भयो ।

**शमीदृषदम्**– शमी च दृषच्च एतयोः समाहारः (शमी र पत्थर यी दुईको समाहार) यस विग्रहमा 'शमी+सु+दृषद्+सु' यहाँ द्वन्द्वसमास "द्वन्द्वाच्चुद०"ले दवर्णान्त शब्दहुनाले समासान्त टच्प्रत्यय भयो, 'शमीदृषद' शब्द बन्यो, यसको नपुंसकत्व र एकवद्भाव भयो, सु आयो, 'शमी दृषदम्' सिद्ध भयो ।

---

वाक् च त्विट् च वाक्त्विषम् । त्वक्स्रजम् । शमीदृषदम् । वाक्त्विषम् । छत्रोपानहम् । समाहारे किम् ? प्रावृट्शरदौ ॥

इति द्वन्द्वसमासः ॥५॥

---

**वाक्त्विषम्–** वाक् च त्विट् च एतयोः समाहारः (वचन र कान्ति यी दुईको समाहार) यस विग्रहमा 'वाच्+सु+त्विष्+सु' यहाँ द्वन्द्वसमास भयो, त्विष् यो षवर्णान्त शब्दहुनाले "द्वन्द्वाच्चुद०"ले टच् प्रत्यय भयो, वाच्का चकारको कुत्व भयो, 'वाक्त्विष'शब्द बन्यो, त्यसको नपुंसकत्व एकवद्भाव भयो, सु आयो, 'वाक्त्विषम्' सिद्ध भयो ।

**छत्रोपानहम्–** छत्रं च उपानहौ च एतेषां समाहारः (छाता र जुत्ता यिनीहरूको समाहार) यस विग्रहमा 'छत्र+सु+उपानह्+औ' यहाँ द्वन्द्वसमास भयो, हवर्ण अन्तमा हुने उपानह् शब्द छ र समासान्त टच् प्रत्यय भयो, 'छत्रोपानह' शब्द बन्यो, त्यसको नपुंसकत्व र एकवद्भाव भयो, सु आयो, 'छत्रोपानहम्' सिद्ध भयो ।

यी पूर्वोक्त वाक्त्वचम् आदि उदाहरणमा "जातिरप्राणिनाम्"ले एकवद्भाव हुन्छ । पूर्व प्रयोग नियम नबताइएको स्थलमा पूर्वप्रयोग नियामक सूत्रको स्मरण गर्नू ।

**समाहारे किमिति–** समाहारे किम् ? "द्वन्द्वाच्चुद०" यस सूत्रमा समाहार अर्थमा टच् प्रत्यय होस् किन भनु ? न भन्ने हो भने 'प्रावृट्+च+शरद्+च' यहाँ इतरेतरयोग द्वन्द्वसमास भएर 'प्रावृट्शरद्' भयो, यहाँ पनि टच् प्रत्यय होला र स्त्रीत्वात् टाप् प्रत्यय भएर प्रावृट्शरदा' यस्तो शब्द बन्ला सो नहोस् भनेर समाहार अर्थमा भनियो । अतः यहाँ टच् प्रत्यय भएन, टच् प्रत्यय नभएकोले टाप् प्रत्यय पनि भएन । इतरेतरयोग हुनाले 'प्रावृट्शरद्' शब्ददेखि द्विवचन औ आयो, 'प्रावृट्शरदौ' सिद्ध भयो ।

**द्वन्द्व समास सकियो ।**

---

## अथ समासान्तप्रकरणम्

**९८९. ऋक्पूरब्धूः पथामानक्षे ५।४।७४॥**

अ अनक्षे इतिच्छेदः । ऋगाद्यन्तस्य समासस्य अप्रत्ययोऽन्तावयवोऽक्षे या धूस्तदन्तस्य तु न । अर्धर्चः । विष्णपुरम् । विमलापं सरः । राजधुरा । अक्षे तु अक्षधूः । दृढधूरक्षः [illegible]खिपथः ॥

**अब समासान्तप्रकरण आरम्भ गरिन्छ ।**

**ऋगिति**– अ अनक्षे यस्तो पदच्छेद गर्नु पर्छ । ऋच्, पुर्, अप्, धुर्, पथिन् यी शब्द अन्तमा हुने समासको अप्रत्यय अन्तको अवयव भएर रहोस्, अक्षसंबन्धी जो धुर्शब्द छ । तदन्त समासको त अप्रत्यय नहोस् । अक्ष भनेको गाडाको चक्काको नाम हो । तत्संबन्धी धुरा भनेको त्यसको मध्यभागमा रहने काठ हो ।

**अर्धर्चः**– ऋचः अर्धम्, (ऋचाको आधा) यस विग्रहमा 'अर्ध+सु+ऋच्+ङस्' यहाँ "अर्धं नपुंसकम्"ले समास भयो, अर्ध शब्दको पूर्वप्रयोग भयो, 'अर्धऋच' भयो, यहाँ "ऋक्पूरब्धूः पथाम्०"ले अप्रत्यय अन्तावयव भयो, 'अर्ध+ऋच' भयो, अर्‌गुण भयो, 'अर्धर्च'शब्द बन्यो, "अर्धर्चाः पुंसि च"ले पुंस्त्व क्लीबत्व दुवै विधान गऱ्यो, पुंलिङ्गमा सु आयो, 'अर्धचः' सिद्ध भयो, नपुसकलिङ्गमा सु आयो, अम् भयो, 'अर्धचम्' सिद्ध भयो ।

**विष्णुपुरम्**– विष्णोः पूः (विष्णुको शहर) यस विग्रहमा 'विष्णु+ङस्+पुर्+सु' यहाँ षष्ठीतत्पुरुष भयो, "ऋक्पूरब्धूः०"ले समासान्त अप् प्रत्यय भयो, 'विष्णपुर' शब्द बन्यो, त्यसदेखि सु आयो, अम् भयो 'विष्णुपुरम्' सिद्ध भयो । यहाँ "परवल्लिङ्गं०"ले क्लीबत्व हुन्छ ।

**विमलापं सरः**– विमला आपो यस्मिन् (निर्मल पानी भएको तलाउ) यो विग्रहमा 'विमला+जस्+अप्+जस्' यहाँ "अनेकमन्यपदार्थे"ले बहुव्रीहि समास भयो, समासान्त अप्प्रत्यय भयो, 'विमलाप'शब्द बन्यो, यो शब्द (सरस्) तलाउको विशेषण हुनाले नपुंसक लिङ्ग भयो, त्यसदेखि सु आयो, 'विमलापम् सरः' सिद्ध भयो ।

**राजधुरा**– राज्ञः धूः (राजाको भार) यस विग्रहमा 'राजन+ङस्+धुर+सु' यहाँ समास भयो, राजन्का नकारको लोप भयो, 'राजधुर्' यहाँ पूर्वसूत्रले समासान्त अप् प्रत्यय भयो, "परवल्लिङ्गं द्वन्द्वतत्पुरुषयोः"ले स्त्रीत्व गरेकोले टाप् प्रत्यय भयो, 'राजधुरा' शब्द बन्यो, त्यसदेखि सु आयो, 'राजधुरा' सिद्ध भयो ।

**अक्षधूः**– गाडाको धुरालाई कहँदा त 'अनक्षे' भनेको हुनाले 'अक्षस्य धूः' यस विग्रहमा समास भएर 'अक्षधुर्' भएपछि यहाँ अप् प्रत्यय भएन 'अक्षधूर्' यस्तै रह्यो, त्यसदेखि सु आयो, हल् ङ्यादिसूत्रले लोप भयो, "र्वोरुपधाया दीर्घ०"ले उपधाको दीर्घ भयो, विसर्ग भयो, 'अक्षधूः' सिद्ध भयो ।

**दृढधूरक्षः**– त्यस्तै दृढा धूर्यस्य अक्षस्य (बलियो धुरा छ जुन गाडाको) यो विग्रहमा पनि 'दृढा+सु+धुर्+सु' यहाँ समास भयो, "स्त्रियाः पुंवत्०" इत्यादि सूत्रले पुंवद्भाव भएर 'दृढधूर्' भयो, यहाँ पनि अक्ष(गाडा)संबन्धी धुर् हुनाले अप् प्रत्यय भएन 'दृढधुर्' शब्ददेखि सु आयो, पूर्ववत् 'दृढधूः' सिद्ध भयो ।

**सखिपथः**– सख्युः पन्थाः (संगिको बाटो) यस विग्रहमा 'सखि+ङस्+पथिन्+सु' यहाँ षष्ठी समास भएर 'सखिपथिन्' भयो, "ऋक्पुरब्धूः०"ले समासान्त अप् प्रत्यय टिलोप भयो, 'सखिपथ'शब्द भयो, त्यसदेखि सु आयो, 'सखिपथः' सिद्ध भयो ।

रम्यपथो देशः ॥

**९९०. अक्ष्णोऽदर्शनात् ५।४।७६॥**

अचक्षुः पर्यायादक्ष्णोऽच् स्यात् समासान्तः । गवामक्षीव गवाक्षः ॥

**९९१. उपसर्गादध्वनः ५।४।८५॥**

प्रगतोऽध्वानं प्राध्वोरथः ॥

**९९२. न पूजनात् ५।४।६९॥**

पूजनार्थात्परेभ्यः समासान्ता न स्युः ।**वा.**(स्वतिभ्यामेव) सुराजा । अतिराजा ॥

**इति समासान्तप्रकरणम् ॥**

**समास प्रकरणं समाप्तम् ॥**

---

**रम्यपथः**– रम्यः पन्था यस्मिन्देशे (राम्रो बाटो छ जुन देशमा) यस विग्रहमा 'रम्य+सु+पथिन्+सु' यहाँ "अनेकमन्यपदार्थे"ले बहुव्रीहि समास भयो, 'रम्यपथिन्' भएपछि प्रकृतसूत्रले अप् प्रत्यय टिलोप भयो, 'रम्यपथ' शब्द बन्यो, त्यसदेखि सु आयो, 'रम्यपथः' सिद्ध भयो ।

**अक्ष्ण इति**– आँखाको पर्याय नभएको अक्षिशब्ददेखि समासान्त अच् प्रत्यय होस् ।

**गवाक्षः**– गवाम् अक्षि[१४३] इव (गाईका आँखा जस्तो) यस विग्रहमा 'गो+आम्+अक्षि+सु' यहाँ षष्ठीसमास भयो, 'गो+अक्षि'भयो, यहाँ "अक्ष्णोऽदर्शनात्"ले समासान्त अच्प्रत्यय भयो, इकारको लोप भयो, 'गो+अक्ष' भयो, यहाँ गो शब्द पदान्त छ र "अवङ् स्फोटायनस्य"मा विकल्प व्यवस्थित हुनाले यहाँ नित्य अवङ् भएर 'गवाक्ष'शब्द बन्यो, यो शब्द पुंलिङ्गी हुनाले पुंलिङ्गमा सु आयो, 'गवाक्षः' सिद्ध भयो ।

**उपसर्गादिति**– उपसर्गदेखि पर रहेका अध्वन् शब्ददेखि समासान्त अच् प्रत्यय होस् ।

**प्राध्वो रथः**– प्रगत अध्वानम (बाटामा अघि बढेको) यस विग्रहमा 'प्र+अध्वन्+अम्', यहाँ "अत्यादयः कान्ताद्यर्थे०"लें समास भयो प्रको पूर्वप्रयोग "उपसर्गादध्वनः"ले अच् प्रत्यय टिलोप भएर 'प्र+अध्व'भयो, दीर्घ भयो, 'प्राध्व'शब्द बन्यो, यो रथको विशेषण हुनाले पुंलिङ्गमा सु आयो 'प्राध्वः' सिद्ध भयो ।

**न पूजनादिति**– पूजनार्थक शब्ददेखि पररहेका शब्ददेखि समासान्त प्रत्यय नहोउन् ।

**(वा.) स्वतिभ्यामिति**– पूजनार्थक सु शब्द र अति शब्ददेखि मात्र पर रहेका शब्ददेखि समासान्त प्रत्यय नहोऊन् भन्नु ।

**सुराजा**– शोभनो राजा (असल राजा) यस विग्रहमा 'सु+राजन्+सु' यहाँ "कुगतिप्रादयः"ले समास भएर 'सुराजन्' भयो, "राजाहः सखिभ्यष्टच्"ले टच्प्रत्यय पाएको "स्वतिभ्यामेव" यो वार्तिकको सहकारपूर्वक "न पूजनात्"ले टच्प्रत्ययको निषेध भयो, सुराजन् यस्तै रह्यो, 'सुराजन्'शब्ददेखि सु आयो, 'सुराजा' सिद्ध भयो ।

**अतिराजा**– अतिक्रान्तो राजानम् (राजालाई अतिक्रमण गरेको) यस विग्रहमा "अत्यादयः कान्ताद्यर्थे०"ले समास भएर 'अतिराजन्' भयो, यहाँ पनि "राजाहःसखिभ्यः०"ले टच् प्रत्यय पाएकोमा पूर्ववत् निषेध भयो, अतिराजन् शब्ददेखि सु आयो, 'अतिराजा' सिद्ध भयो । समासान्तप्रकरण सकियो ।

**समासप्रकरण समाप्त भयो ।**

---

१४३ यहाँ अक्षि शब्द सदृशअर्थमा लाक्षणिक छ । "अक्ष्णोऽदर्शनात्"यो सूत्रमा नञ् पर्युदास हुनाले पनि यही अर्थ आउँछ ।

## अथ तद्धितप्रकरणम्

### तत्रादौ साधारणप्रत्ययाः

**९९३. समर्थानां प्रथमाद्वा ४।१।८२॥**

इदं पदत्रयमधिक्रियते प्राग्दिश इति यावत् ॥

**९९४. अश्वपत्यादिभ्यश्च ४।१।८४॥**

एभ्योऽण् स्यात् प्राग्दीव्यतीयेष्वर्थेषु । अश्वपतेरपत्यादि आश्वपतम् ।

---

**अब तद्धितप्रकारणको आरम्भ गरिन्छ ।**

**त्यहाँ पहिले साधारण प्रत्ययहरू बताइन्छन् ।**

यत्पादाम्भोरुहध्यानान्मनो भवति निर्मलम् ।
लीलाप्रियं तं नौमि श्रीहरिं दिव्यविग्रहम् ॥

प्राचीनवैयाकरणहरूले "तस्मै हितम्" यो अर्थमा सर्वप्रथम प्रत्यय विधान गरेर त्यस प्रकरणलाई तद्धित भनिएको छ । यहाँ "तस्मै हितम्" यो सूत्र बीचमा ५।१।५ भए पनि प्राचीन आचार्यहरूको अनुसरण गरेर "तस्मै हितम्" यो सूत्र भन्दा पहिलेका प्रत्ययहरूलाई पनि तद्धित संज्ञा दिएको हो भन्ने बुझिन्छ ।

**समर्थानामिन्ति–** "प्राग्दिशो विभक्तिः" यो सूत्र सम्म समर्थानाम्, प्रथमात्, वा यी तीन पदको अधिकार गरिन्छ ।

**समर्थ–** यहाँ समर्थ भन्नाले पूर्वापरैकार्थीभाव रूप सामर्थ्य र सन्धिकार्य गरिसकेको पदसमूह भन्ने बुझिन्छ । अतः पूर्वापरैकार्थीभावसामर्थ्य नभएको पदसमूह जस्तै 'वस्त्रमुपगोरपत्यं चैत्रस्य' आदि स्थलमा "तस्यापत्यम्" आदि सूत्रको प्रयोग भएर 'वस्त्रमौपगवश्चैत्रस्य' यस्तो हुँदैन । त्यस्तै 'सुष्ठु+उत्थितः' यहाँ समास भएर बनेको पदसमूहको सन्धिकार्य नगर्दै 'सु+उत्थित' आदि शब्ददेखि अण् आदि प्रत्यय हुँदैनन् । सन्धिकार्य गरेको पद सूत्थित आदि शब्ददेखि नै अण् आदि तद्धित प्रत्यय हुन्छन् । 'सु उत्थितस्य अपत्यम्' यस विग्रहमा 'सु उत्थित'शब्ददेखि "अत इञ्"ले इञ् प्रत्यय गर्दा 'सावुत्थितिः' यस्तो हुन्छ । सन्धिकार्य गरेपछि इञ्प्रत्यय गर्दा 'सौत्थितिः' यस्तो हुन्छ । 'सावुत्थितिः' यस्तो रूप नहोस् भनेर "तस्यापत्यम्"यो सूत्रमा सन्धिकार्य गरिएको षष्ठचन्त समर्थदेखि भनिएको हो । **प्रथमात्–** "तस्यापत्यम्", "तेन प्रोक्तम्" आदि सूत्रमा प्रथमपदबोध्य शब्ददेखि नै अण् आदि प्रत्यय हुन्छन् । जस्तै- 'उपगोरपत्यम्' यहाँ उपगु शब्ददेखि अण् प्रत्यय हुन्छ, अपत्य शब्ददेखि हुँदैन ।

**वा–** विकल्पले भन्नाले तद्धितप्रत्ययहरू सबै वैकल्पिक छन् । अतः एकपक्षमा अण् आदि प्रत्यय हुन्छन्, अण् आदि प्रत्यय नभएको पक्षमा वाक्य पनि रहन्छ र एकपक्षमा समास पनि हुन्छ र औपगवः, उपगोरपत्यम्, उपग्वपत्यम् यी तीनवटै रूप हुन्छन् ।

**अश्वपत्यादीति–** अश्वपति आदि गणपठितशब्दप्रकृतिक सुबन्तसमर्थदेखि अण् प्रत्यय होस् प्राग्दीव्यतीय अर्थमा । "तेन दीव्यतिखनतिजयतिजितम्" यो सूत्रदेखि पहिलेको सूत्र "प्राग्वहतेष्ठक्" सम्म उक्त अर्थमा अणप्रत्ययको अधिकार हुन्छ ।

**आश्वपतम्–** अश्वपतेः अपत्यादि (अश्वपतिको सन्तान आदि) यस विग्रहमा 'अश्वपति+ङस्'

गाणपतम् ॥

**९९५. दित्यदित्यादित्यपत्युत्तरपदाण्ण्यः ४।१।८५॥**

दित्यादिभ्यः पत्युत्तरपदाच्च प्राग्दीव्यतीयेष्वर्थेषु ण्यः स्यात् । अणोऽपवादः । दितेरपत्यं दैत्यः । अदितेरादित्यस्य वा अपत्यम् ॥

**९९६. हलो यमां यमि लोपः ८।४।६४॥**

हलः परस्य यमो लोपः स्याद् वा यमि । इति यलोपः । आदित्यः ।

---

यसदेखि "तस्यापत्यम्" यो सूत्रको अर्थमा "अश्वपत्यादिभ्यश्च"ले अण् प्रत्यय भयो, अनुबन्धलोप भयो, 'अश्वपति+ङस्+अ' भयो, "तद्धिताः" यो सूत्रको अधिकार हुनाले अलाई तद्धितसंज्ञा "कृत्तद्धितसमासाश्च"ले 'अश्वपति+ङस्+अ'लाई प्रातिपदिकसंज्ञा भयो, सुप्को लुक् भयो, 'अश्वपति+अ' यहाँ "यचिभम्"ले आश्वपति यसलाई भसंज्ञा भयो । "तद्धितेष्वचामादेः"ले आदिवृद्धि भयो, 'आश्वपति+अ' "यचिभम्"ले आश्वपति यसलाई भसंज्ञा भयो । "यस्येति च"ले इकारको लोप भयो, 'आश्वपत' शब्द बन्यो, त्यसदेखि सु आयो, 'आश्वपतम्' सिद्ध भयो । यहाँ विग्रहमा अपत्यादि भनेर आदि शब्द राखेको अपत्यादि विकारान्त सबै अर्थमा 'अश्वपति' शब्ददेखि यो सूत्रले अण् प्रत्यय नै हुन्छ र 'आश्वपत' यही शब्द बन्दछ भन्ने बुझाउन हो । यस्तै अरू ठाउँमा पनि जहाँ जहाँ विग्रहमा आदि शब्द राखिएको छ त्यहाँ अपत्यादि विकरान्त (प्राग्दीव्यतीय) अर्थ सम्झनुपर्छ । तद्धितनिष्पन्न शब्दमा विशेष्य अनुसार लिङ्ग, विभक्ति, वचन हुन्छन् । यहाँ 'अपत्यम्' यो नपुंसकलिङ्गी विशेष्यको विवक्षा छ र आश्वपत शब्ददेखि नपुंसक लिङ्ग भएर 'आश्वपतम्' भएको छ ।

**गाणपतम्**– गणपतेः अपत्यादि (गणपतिको सन्तान आदि) यस विग्रहमा "गणपति ङस् यसदेखि पूर्ववत्", "तस्यापत्यम्"को अर्थमा "अश्वपत्यादिभ्यश्च"ले अण् प्रत्यय, अनुबन्ध लोप, विभिक्तिको लुक्, आदिवृद्धि, भसंज्ञा इकारलोप भएर 'गाणपत' शब्द बन्यो । यो शब्द 'अपत्यम्'को विशेषण हुनाले नपुंसक लिङ्गमा सु आयो र 'गागपतम्' सिद्ध भयो । यस्तै अरू अर्थमा पनि अण् प्रत्यय भएर 'गाणपत' शब्द बन्दछ ।

**दित्यदित्यादित्येति**– दिति, अदिति, आदित्य, यी शब्ददेखि र पतिशब्द उत्तरपद हुने शब्ददेखि ण्य प्रत्यय होस्, प्राग्दीव्यतीय अर्थमा । यो सूत्र "प्राग्दीव्यतोऽण्"को अपवाद हो, "अश्वपत्यादिभ्यश्च"को अपवाद हैन । अश्वपत्यादि शब्दमा त यसलाई त्यसले बाध्दछ । समर्थ र विभक्ति तत्तत् सूत्रमा बताइने हुनाले यहाँ यो शब्ददेखि यो प्रत्यय होस् मात्र भनिएको छ ।

**दैत्यः**– दितेरपत्यं पुमान् (दितिको छोरा) यस विग्रहमा 'दिति+ङस्'देखि "तस्यापत्यम्" सूत्रको अर्थमा "दित्यदित्यादित्य०"ले "प्राग्दीव्यतोऽण्"लाई बाधेर ण्य प्रत्यय भयो र ण्यको अनुबन्ध लोप भयो, विभक्तिको लुक भयो, 'दिति+य' यहाँ आदिवृद्धि भयो, "यस्येति च"ले इकारको लोप भयो, 'दैत्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'दैत्यः' सिद्ध भयो ।

**आदित्यः**– अदितेरपत्यम् पुमान् (अदितिको छोरा) यस विग्रहमा 'अदिति+ङस्'देखि उक्त सूत्रले ण्य प्रत्यय, अनुबन्धलोप, विभक्तिलुक्, आदिवृद्धि, भसंज्ञा इकारलोप भयो, 'आदित्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'आदित्यः' सिद्ध भयो ।

**हलो यमामिति**– हल्देखि पर रहेका यम्को यम् पर भएमा विकल्पले लोप होस् ।

**आदित्यः**– आदित्यस्य अपत्यं पुमान् (आदित्यको छोरा) यस विग्रहमा 'आदित्य+ङस्' यो षष्ठयन्त समर्थदेखि "दित्यदित्यादित्य"ले अपत्य अर्थमा ण्य भयो, 'आदित्य+य' भयो, यहाँ आदिवृद्धि "यस्येति च"ले अकारको लोप भयो, "हलो यमां०"ले तकारदेखि पर रहेको यकारको

प्राजापत्यः । **वा.**(देवाद्यञञौ) । दैव्यम् । दैवम् । **वा.**(वहिषष्टिलोपो यञ्च) । बाह्यः । **वा.**(ईकक्च) ॥

९९७. **किति च** ७ । २ । ११८ ॥

किति तद्धितेऽचामादेरचो वृद्धिः स्यात् । बाहीकः ॥ **वा.**(गोरजादिप्रसङ्गे यत्) । गोरपत्यादि गव्यम् ॥

९९८. **उत्सादिभ्योऽञ्** ४।१।८६॥

---

यम्-यकार- पर हुनाले लोप भयो, 'आदित्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'आदित्यः' सिद्ध भयो । यकारको लोप नभएमा 'आदित्य्यः' यो रूप पनि हुन्छ ।

**प्राजापत्यः**- प्रजापतेरपत्यादि (प्रजापतिको सन्तान आदि) यस विग्रहमा पतिशब्द उत्तरपद हुने प्रजापति शब्ददेखि "दित्यदित्यादित्य"०ले ण्यप्रत्यय आदिवृद्धि, भसंज्ञा, इकारको लोप भयो, प्राजापत्य शब्द बन्यो, त्यसदेखि सु आयो प्राजापत्यः सिद्ध भयो ।

**वा. देवादिति**- देव शब्ददेखि प्राग्दीव्यतीय अर्थमा यञ् र अञ् प्रत्यय होऊन् ।

यञ् प्रत्यय र ण्य प्रत्ययको अनुबन्धलोप भएपछि 'य' 'य' एउटै रूप भए पनि स्वरमा अन्तर छ ।

**दैव्यम्/दैवम्**- देवस्य इदम् (देवताको यो) यस विग्रहमा 'देव+ङस्'देखि प्राग्दीव्यतीय "तस्येदम्" यो सूत्रको अर्थमा "देवाद्यञञौ"ले यञ् प्रत्यय र अञ् प्रत्यय भयो, आदिवृद्धि, अलोप भयो, 'दैव्य', 'दैव' यी दुई शब्द बने । दैव्य शब्ददेखि सु आयो, 'दैव्यम्' सिद्ध भयो । 'दैव'शब्ददेखि सु आयो, 'दैवम्' सिद्ध भयो ।

**(वा.) बहिष इति**- बहिस् शब्ददेखि प्राग्दीव्यतीय अर्थमा यञ् प्रत्यय होस्, टिको लोप पनि होस् ।

**बाह्यः**- बहिर्भवः (बाहिर भएको) यस विग्रहमा बहिष् शब्ददेखि प्राग्दीव्यतीय भव अर्थमा "बहिषष्टिलोपो०" यस वार्तिकले यञ् प्रत्यय भयो, बहिष्को टि(इष्)को लोप भयो, आदिवृद्धि भयो, 'बाह्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'बाह्यः' सिद्ध भयो ।

**(वा.) ईकक् चेति**- बहिष् शब्ददेखि प्राग्दीव्यतीय अर्थमा ईकक् प्रत्यय होस् र टिलोप पनि होस् ।

**किति चेति**- ककारको इत्सँज्ञा हुने तद्धितसंज्ञक प्रत्यय पर भएमा अच्हरू मध्येमा आदि अच्को स्थानमा वृद्धि होस् ।

**बाहीकः**- बहिर्भवः (बाहिर भएको) यस विग्रहमा बहिष् शब्ददेखि "ईकक् च" यो वार्तिकले ईकक् प्रत्यय र टिलोप भयो, "किति च"ले आदिवृद्धि भयो, 'बाहीक'शब्द बन्यो, त्यसदेखि सु आयो, 'बाहीकः' सिद्ध भयो ।

**(वा.) गोरजादीति**- गो शब्ददेखि प्राग्दीव्यतीय अर्थमा सबै अच् आदिमा हुने प्रत्ययको प्रसंगमा यत् प्रत्यय होस् । अच् आदिमा हुने प्रत्ययको प्रसङ्गमा भन्नाले (अच् आदिर्येषां ते अजादयस्तेषां प्रसङ्गः प्राप्तिस्तत्र) अच् आदिमा हुने अण् आदि प्रत्ययको जहाँ जहाँ प्राप्ति हुन्छ त्यहाँ भन्ने अर्थ हो । अत जहाँ जहाँ अच् आदिमा हुने अण् आदि प्रत्ययको प्राप्तिस्थल छ त्यहाँ 'गो'शब्ददेखि यत् प्रत्यय नै हुन्छ ।

**गव्यम्**- गोरपत्यादि (गाइको सन्तान आदि) यस विग्रहमा 'गो+ङस्'देखि "तस्यापत्यम्"ले अण् प्रत्यय पाएमा "गोरजादिप्रदिप्रसङ्गे०"ले अच् आदिमा हुने प्रत्यय अण्को प्रसङ्ग हुनाले त्यसलाई बाधेर यत् प्रत्यय भयो, विभक्तिको लुक् भयो, 'गो+य' यहाँ अव् आदेश भयो, 'गव्य'शब्द बन्यो, त्यसदेखि सु आयो, अम् भयो 'गव्यम्' सिद्ध भयो ।

**अपत्यादि**- यहाँ आदि भन्नाले "तत्र भवः" यस सूत्रले "भवः" अर्थमा पाएको अण्लाई बाधेर यत् प्रत्यय हुन्छ । "तस्येदम्" यो सूत्रले अण् हुने ठाउँमा पनि यत् प्रत्यय हुन्छ भन्ने र यस्तै अरू अजादि प्रत्ययको प्रसङ्गमा पनि यत् प्रत्यय नै हुन्छ भन्ने आशय हो ।

**उत्सादिभ्य इति**- उत्सादिगणपठित शब्ददेखि यत् प्रत्यय होस् प्राग्दीव्यतीय अर्थमा ।

---

औत्सः ॥

इत्यपत्यादिविकारान्तार्थसाधारणप्रत्ययप्रकरणम्

## अथापत्याधिकारप्रकरणम्

**९९९. स्त्रीपुंसाभ्यां नञ्स्नञौ भवनात् ४।१।८७॥**

धान्यानां भवन इत्यतः प्रागर्थेषु स्त्रीपुंसाभ्यां क्रमान्नञ्स्नञौ स्तः । स्त्रैणः । पौंस्नः ॥

**१०००. तस्यापत्यम् ४।१।९२॥**

षष्ठचन्तात्कृतसन्धेः समर्थादपत्येऽर्थे उक्ता वक्ष्यमाणाश्च प्रत्यया वा स्युः ॥

---

**औत्सः**– उत्से जात (खोल्सामा जन्मेको) यस विग्रहमा 'उत्स+ङि' यसदेखि "तत्र जातः" यो सूत्रको अर्थमा "प्राग्दीव्यतोऽण्"ले अण् पायो, त्यसलाई बाधेर "उत्सादिभ्यः०"ले अञ् प्रत्यय भयो, आदिवृद्धि, अकारको लोप भयो, 'औत्स' शब्द बन्यो, त्यसदेखि सु आयो, 'औत्सः' सिद्ध भयो । 'उत्सस्य अपत्यम्' यस्तो विग्रह ठीक छैन । किनकि उत्स भनेको खोल्सो हो खोल्साको पनि सन्तान हुन्छ र ? 'उत्सः प्रस्रवणं वारिप्रवाहः' (अमरकोश)

**अपत्यादि विकारान्त अर्थमा हुने साधारण प्रत्ययको प्रकरण सकियो ।**

-------------------------------------------

**अब अपत्याधिकार प्रकरण आरम्भ गरिन्छ ।**

**स्त्रीपुंसाभ्यामिति**– "धान्यानां भवने क्षेत्रे खञ्" यो सूत्रदेखि पूर्वसम्मका अर्थमा स्त्री शब्द र पुंस्‌शब्ददेखि क्रमैले नञ् प्रत्यय र स्नञ् प्रत्यय होऊन् ।

**स्त्रैणः**– स्त्रिया अपत्यं पुमान् (स्त्रीको छोरो) यस विग्रहमा 'स्त्री+ङस्'देखि "स्त्रीपुंसाभ्यां नञ्स्नञौ"ले नञ् प्रत्यय भयो, ञकारको इत्संज्ञा, लोप भयो, विभक्तिको लुक् भयो, 'स्त्री+न' भयो, "तद्धितेष्वचामादेः"ले वृद्धि भयो र स्त्रीका ईकारका स्थानमा ऐकार भयो, स्त्रैन, णत्व भयो, 'स्त्रैण' शब्द बन्यो, त्यसदेखि सु आयो, 'स्त्रैणः' सिद्ध भयो ।

**पौंस्नः**– पुंसः अपत्यम् (पुरुषको छोरा) यस विग्रहमा 'पुंस्+ङस्'देखि स्नञ् प्रत्यय भयो, 'पुंस्+स्न' 'पुंस्' यसलाई "स्वादिष्वसर्वनामस्थाने"ले पदसंज्ञा भयो, संयोगान्तलोप भयो, 'पुम्+स्न' आदिवृद्धि भयो, अनुस्वार भयो, पौंस्न शब्द बन्यो, त्यसदेखि सु आयो, 'पौंस्नः' सिद्ध भयो । पुम्स् शब्ददेखि स्नञ् प्रत्यय नगरेर नञ् प्रत्यय गर्ने हो भने सकारको संयोगान्तलोप गर्दा 'पौन' यस्तो अनिष्ट रूप हुने हुनाले 'पौंस्न' यो शब्द सिद्ध गर्न स्नञ् प्रत्यय गरेको स्पष्ट छ ।

**तस्येति**– सन्धिगरिएको षष्ठचन्त समर्थदेखि अपत्य अर्थमा माथि कहिएका र पछि कहिने प्रत्यय होऊन् ।

**१००१. ओर्गुणः ६।४।१४६॥**

उवर्णान्तस्य भस्य गुणस्तद्धिते । उपगोरपत्यमौपगवः । आश्वपतः । दैत्यः । औत्सः । स्त्रैणः । पौंस्नः ॥

**१००२. अपत्यं पौत्रप्रभृति गोत्रम् ४।१।१६२॥**

अपत्यत्वेन विवक्षितं पौत्रादि गोत्रसंज्ञं स्यात् ॥

**१००३. एको गोत्रे ४।१।९३॥**

गोत्रे एक एवापत्यप्रत्ययः स्यात् । उपगोर्गोत्रापत्यमौपगवः ॥

**१००४. गर्गादिभ्यो यञ् ४।१।१०५॥**

गोत्रापत्ये । गर्गस्य गोत्रापत्यं गार्ग्यः । वात्स्यः ॥

---

**ओरिति**– उवर्ण अन्तमा हुने भसंज्ञक अङ्गका स्थानमा गुण होस् तद्धितसज्ञंक प्रत्यय पर भएमा ।

**औपगवः**– उपगोरपत्यम् पुमान् (उपगुको छोरा) यस विग्रहमा 'उपगु+ङस्'देखि "प्राग्दीव्यतोऽण्"ले उक्त अण् प्रत्यय भयो, विभक्तिको लुक् भयो, अजादि प्रत्यय पर हुनाले "यचि भम्"ले उपगु यसलाई भसंज्ञा भएपछि, "ओर्गुणः"ले "अलोऽन्त्यस्य" लगाएर उपगुका उकारका स्थानमा गुण भएर ओकार भयो, 'उपगो+अ', यहाँ "तद्धितेष्वचामादेः"ले आदिवृद्धि भयो, 'औपगो+अ' भयो, अव् आदेश भयो, 'औपगव' शब्द बन्यो, त्यसदेखि सु आयो, 'औपगवः' सिद्ध भयो ।

आश्वपतः, दैत्यः, औत्सः, स्त्रैणः, पौंस्नः, यिनीहरूको साधनप्रक्रिया माथि नै बताइयो । यहाँ "तस्यापत्यम्" यो सूत्रको अर्थमा भएको हो भन्ने देखाउन यहाँ उल्लेख गरिएको मात्र हो ।

**अपत्यमिति**– अपत्यत्व (सन्तानको धर्म)ले विवक्षा गरिएको नाति आदि आदि गोत्रसंज्ञक होस् ।

**एको गोत्र इति**– गोत्र अर्थ बुझिँदामा एक प्रत्यय मात्र होस् । उपगुको अपत्यत्वले विवक्षा गरिएको उपगुको नाति पनाति सबैलाई "अपत्यम् पौत्रप्रभृति०"ले गोत्रसंज्ञा भयो । अनि उपगोर्गोत्रापत्यम् (उपगुको गोत्रसंज्ञक सन्तान) यस विग्रहमा उपगुको नाति आदिलाई बुझाउँदा पनि उपगु+ङस्देखि "तस्यापत्यम्"ले अण् प्रत्यय भएर पूर्ववत् 'औपगवः' सिद्ध भयो । अब औपगवस्य अपत्यम् भन्दा पुनः "अत इञ्"ले इञ् प्रत्यय पाएकोमा "एको गोत्रे"ले निषेध गऱ्यो, 'औपगविः' यस्तो भएन । यसरी तेस्रो, चौथो, पाँचौ हुँदै हजारौ पुस्तासम्मकालाई बताउँदा पनि यौटै अण् प्रत्यय मात्र भएर 'औपगवः' यही एक शब्दको प्रयोग हुने भयो । अन्यथा औपगवस्य अपत्यम् यहाँ इञ् प्रत्यय भएर 'औपगविः' होला । औपगवेरपत्यम् यहाँ "यञिञोश्च"ले फक् होला र 'औपगवायनः' होला । पुनः इञ् प्रत्यय भएर 'औपगवायनिः' होला । यसरी प्रत्यय हुदै जालान्, त्यो इष्ट छैन । अतः ती अनिष्ट प्रत्यय नहोऊन् भन्ने विचारले "एको गोत्रे"ले यौटै मात्र प्रत्यय होस् भनेर नियम गरेको हो ।

**गर्गादिभ्य इति**– गर्ग आदिगण पठितशब्द प्रकृतिक षष्ठचन्त समर्थदेखि गोत्रापत्य अर्थ बुझिँदामा यञ् प्रत्यय होस् ।

**गार्ग्यः**– गर्गस्य गोत्रापत्यम् पुमान् (गर्गका गोत्रापत्य पुरुष) यस विग्रह 'गर्ग+ङस्' देखि "गर्गादिभ्यो यञ्"ले यञ् प्रत्यय भयो, प्रातिपदिकसंज्ञा विभक्तिलुक् भयो, आदिवृद्धि भसंज्ञा अकारको लोप भयो 'गार्ग्य' शब्द बन्यो । त्यसदेखि सु आयो "गार्ग्यः" सिद्ध भयो ।

**वात्स्यः**– वत्सस्य गोत्रापत्यम् (वत्सको गोत्रापत्य पुरुष) यस अर्थमा 'वत्स+ङस्'देखि प्रकृत सूत्रले यञ् प्रत्यय, प्रातिपदिकसंज्ञा, विभक्तिलुक्, आदिवृद्धि, भसंज्ञा अकारको लोप भयो, 'वात्स्य'शब्द बन्यो त्यसदेखि सु आयो । 'वात्स्यः' सिद्ध भयो ।

---

**१००५. यञञोश्च २।४।६४॥**

गोत्रे यद्यञन्तमञन्तं च तदवयवयोरेतयोर्लुक् स्यात्तत्कृते बहुत्वे न तु स्त्रियाम् । गर्गाः । वत्साः ॥

**१००६. जीवति तु वंश्ये युवा ४।१।१६३॥**

वंश्ये पित्रादौ जीवति पौत्रादेर्यदपत्यं चतुर्थादि तद्युवसंज्ञमेव स्यात् ॥

**१००७. गोत्राद्यून्यस्त्रियाम् ४।१।९४॥**

यून्यपत्ये गोत्रप्रत्ययान्तादेव प्रत्ययः स्यात्, स्त्रियां तु न युवसंज्ञा ॥

**१००८. यञिञोश्च ४।१।१०१॥**

गोत्रे यौ यञिञौ तदन्तात्फक् स्यात् ॥

**१००९. आयनेयीनीयियः फढखछघां प्रत्ययादीनाम् ७।१।२॥**

प्रत्ययादेः फस्य आयन्, ढस्य एय्, खस्य ईन्, छस्य ईय्, घस्य इय्, एते स्युः ।

---

**यञञोरिति**– गोत्रापत्य अर्थमा जो यञ् प्रत्ययान्त र अञ् प्रत्ययान्त प्रातिपदिक छ, त्यसको अवयव यञ र अञ् प्रत्ययको लुक् होस्, गोत्रप्रत्ययान्तकृत बहुत्व बुझिँदामा, स्त्रीलिङ्गमा त लुक् नहोस् ।

**गर्गाः**– गर्गस्य गोत्रापत्यानि पुमांसः (गर्गका गोत्रापत्य पुरुषहरू) यहाँ 'गर्ग+ङस्'देखि "गर्गादिभ्यो यञ्"ले यञ् प्रत्यय भयो, यहाँ गोत्र प्रत्ययकृत बहुत्व बुझिएकोले "यञिञोश्च"ले यञ् प्रत्ययको लुक् भयो । अतः आदिवृद्धि अकारको लोप भएन । पूर्ववत् गर्ग शब्द नै रह्यो तब गर्गशब्ददेखि जस् आयो, विभक्तिकार्य भयो, 'गर्गाः' सिद्ध भयो ।

**वत्साः**– वत्सस्य गोत्रापत्यानि पुमांसः (वत्सका गोत्रापत्य पुरुषहरू) यस विग्रहमा यहाँ 'वत्स+ङस्'देखि "गर्गादिभ्यो यञ्"ले यञ्प्रत्यय भयो, विभक्तिको लुक् भयो, गोत्रप्रत्ययकृत बहुत्वसंङ्ख्या बुझिएकोले "यञिञोश्च"ले यञ् प्रत्ययको लुक् भयो । अतः आदिवृद्धि, अकार लोप भएन, 'वत्स'शब्द नै रह्यो, वत्स शब्ददेखि बहुत्वसंख्या बुझिँदामा जस् आयो, विभक्तिकार्य भयो, 'वत्साः' सिद्ध भयो । अव गार्ग्यशब्दका रूप- गार्ग्यः, गार्ग्यो, गर्गाः । गार्ग्यम्, गार्ग्यो, गर्गान् इत्यादि र वत्स शब्दका रूप– वात्स्यः, वात्स्यौ, वत्साः । वात्स्यम्, वात्स्यौ, वत्सान् इत्यादि हुन्छन् । अर्थात् बहुवचनमा गार्ग्य शब्दको 'गर्ग' र 'वात्स्य'शब्दको 'वत्स' यो स्वरूप हुन्छ ।

**जीवतीति**– वंशमा भएका पिता आदि जीवित भएमा नाति आदिको जो चौथो आदि सन्तान छ त्यो अपत्य युवासंज्ञक नै होस्, गोत्रसंज्ञक नहोस् ।

**गोत्राद्यूनीति**– युवापत्यको विवक्षा गरिएमा गोत्रप्रत्ययान्तदेखि नै प्रत्यय होस्[१४४] स्त्रीलिंगमा त युवसंज्ञा हुदैन ।

**यञिञोरिति**– गोत्रापत्य अर्थमा जो यञ्प्रत्यय र इञ्प्रत्यय विधान गरिए, तदन्तशब्ददेखि फक्प्रत्यय होस् युवापत्य[१४५] अर्थमा ।

**आयनेयीति**– प्रत्ययका आदिमा रहेका फकारका स्थानमा आयन् आदेश ढकारका स्थानमा एय् आदेश, खकारका स्थानमा ईन् आदेश, छकारका स्थानमा ईय् आदेश र घकारका स्थानमा इय् आदेश होस् ।

---

१४४ स्त्रीलिङ्गमा युवापत्यत्व निषेध गर्ने 'अस्त्रियाम्' यो पद "जीवति तु वंश्ये युवाऽस्त्रियाम्" यस्तो सूत्र पढेर उही सूत्रमा राख्नु योग्य हो, यो तत्त्वबोधिनीकारको भनाइ छ ।

१४५ "यून्येवायं प्रत्ययः, गोत्राद यूनि प्रत्ययो भवति इति वचनात्" यो काशिकावृत्तिकारको भनाइ छ ।

गर्गस्य युवापत्यं गार्ग्यायणः । दाक्षायणः ॥

**१०१०. अत इञ् ४।१।९५॥**

अपत्येऽर्थे । दाक्षिः ॥

**१०११. बाह्वादिभ्यश्च ४।१।९६॥**

---

**गार्ग्यायणः**– गर्गको नातिलाई "अपत्यं पौत्रप्रभृति"ले गोत्रसंज्ञा र बाबुबाजे जीवित छँदै नातिको छोरा पनातिलाई "जीवति तु वंश्ये युवा"ले युवापत्यसंज्ञा भएपछि गर्गस्य युवापत्यम् (गर्गको युवा सन्तान) यो विग्रहमा "गोत्राद् यून्यस्त्रियाम्" यो सूत्रले 'गोत्रप्रत्ययान्तदेखि नै युवापत्य अर्थमा प्रत्यय होस्' भन्ने नियम गरेकोले गर्ग शब्ददेखि गोत्रसंज्ञक यञ् प्रत्यय भएर बनेको रूप गार्ग्य शब्दको षष्ठचन्त 'गार्ग्य+ङस्'देखि "यञिञोश्च"ले युवापत्य अर्थमा फक् प्रत्यय भयो, विभक्ति लुक् भयो, "आयनेयिनीयि०"ले प्रत्ययका आदिमा रहेको फकारका स्थानमा आयन् आदेश भयो, 'गार्ग्य+आयन' भयो, 'गार्ग्य'लाई भसंज्ञा, "यस्येति च"ले अकारको लोप भयो, णत्व भयो र 'गार्ग्यायण'शब्द बन्यो, त्यसदेखि सु आयो, 'गार्ग्यायणः' सिद्ध भयो ।

गार्ग्यायण शब्दको अर्थ हो गर्गको चौथो पुस्ताको सन्तान । यहाँ "जीवति तु वंश्ये युवा" यस सूत्रले पितृ, पितामह, प्रपितामह, यी तीनवटै वा यी मध्ये कुनै यौटा पनि जीवित छैनन् भने त्यो बालक युवापत्य कहलाउदैन र त्यस्तो स्थितिमा त्यसलाई बताउँदा गोत्र प्रत्यय मात्र हुन्छ र त्यो बालक 'गार्ग्य' कहलाउँछ । "अपत्यं पौत्रप्रभृति०"ले पौत्र आदि सबै सन्तान गोत्रसंज्ञक हुन्छन् र कुनै पनि सन्तानलाई बुझाउँदा गोत्र प्रत्यय मात्र हुन्छ । यस्तै पाँचौ, छैटौ पुस्ताको बालक बाबु आदि जीवित भए 'गार्ग्यायण' भनिन्छ, नभए 'गार्ग्य' नै भनिन्छ ।

**दाक्षायणः**– दक्षस्य युवापत्यम् (दक्षको युवा सन्तान) भन्ने विग्रहमा यहाँ पनि "गोत्राद्यूनि" यो नियमानुसार दक्ष शब्दको गोत्र प्रत्ययान्त रूप दाक्षि शब्दको षष्ठचन्त "यञियोश्च"ले 'दाक्षि+ङस्' यसदेखि फक् प्रत्यय भयो, फकारका स्थानमा आयन् आदेश भयो, सुप्को लुक् भयो, 'दाक्षि+आयन' भयो, भसंज्ञा "यस्येति च"ले इकारको लोप, णत्व भयो, 'दाक्षायण' शब्द बन्यो, त्यसदेखि सु आयो, 'दाक्षायणः' सिद्ध भयो । दक्ष शब्ददेखि अपत्य अर्थमा हुने प्रत्यय नै गोत्रापत्यमा पनि हुन्छ, र दक्षस्य अपत्यम् यो विग्रहमा 'दाक्षिः' यो रूप हुन्छ । गोत्रापत्यम् यो विग्रहमा पनि 'दाक्षिः' यही रूप हुन्छ । तर गर्गशब्ददेखि अपत्य अर्थमा "ऋष्यन्धकवृष्णि०" यो सूत्रले अण् प्रत्यय भएर 'गार्गः' यो रूप हुन्छ । गोत्रापत्य अर्थमा "गर्गादिभ्यो यञ्"ले यञ् प्रत्यय हुन्छ र 'गार्ग्यः' यो रूप बन्छ । अथवा अनन्तरापत्यमा (छोरा) मा गोत्रत्वको आरोप गरेमा अपत्यअर्थमा पनि 'गार्ग्यः' हुनसक्छ । जस्तै गर्गादिगणभित्र पर्ने जमदग्निशब्द र पराशर शब्ददेखि अपत्य अर्थमा पनि गोत्रापत्यत्वको आरोपले जामदग्न्यः, पाराशर्यः यी शब्द बने । तर अपत्यमा गोत्रापत्यत्वको आरोप नगर्ने हो भने त "ऋष्यन्धक०"ले अण् भएर जामदग्नः, पाराशरः यी रूप हुन्छन् । यो [१४६] काशिकाकारले भनेका छन् ।

**अत इञ् इति**– अकारान्त शब्ददेखि अपत्य अर्थमा इञ् प्रत्यय होस् ।

**दाक्षिः**– दक्षस्यापत्यम् पुमान् (दक्षका छोरा अथवा सन्तान" भन्दा 'दक्ष+ङस्'देखि "अत इञ्"ले इञ् प्रत्यय सुको लुक आदिवृद्धि अकारको लोप भयो, 'दाक्षिः' सिद्ध भयो ।

**बाह्वादीति**– बाहु-आदि गणमा पढिएका शब्ददेखि पनि इञ् प्रत्यय होस् अपत्य अर्थमा ।

---

१४६ "गर्गादिभ्यो यञ्" यस सूत्रको वृत्तिमा ।

बाहविः । औडुलोमिः । **वा.**(लोम्नोऽपत्येषु बहुष्वकारो वक्तव्यः) । उडुलोमाः । आकृतिगणोऽयम् ॥

१०१२. **अनृष्यानन्तर्ये बिदादिभ्योऽञ् ४।१।१०४॥**

ये त्वत्रानृषयस्तेभ्योऽपत्येऽन्यत्र तु गोत्रे । बिदस्य गोत्रम् बैदः । बैदौ । बिदाः । पुत्रस्यापत्यं पौत्रः । पौत्रौ । पौत्राः । एवं दौहित्रादयः ॥

---

**बाहविः**– बाहोरपत्यम् पुमान् (बाहुको छोरा सन्तान) यस अर्थमा 'बाहु+ङस्'देखि "बाह्वादिभ्यश्च"ले इञ् प्रत्यय, विभक्तिलुक् भयो, 'बाहु+इ' भयो, यहाँ आदिवृद्धि भयो, 'बाहवि' भयो, त्यसदेखि सु आयो, 'बाहविः' सिद्ध भयो ।

**औडुलोमिः**– उडुलोम्नः अपत्यम् पुमान् (उडुलोमाको छोरा सन्तान) यस विग्रहमा 'उडुलोमन्+ङस्'देखि अपत्य अर्थमा "बाह्वादिभ्यश्च"ले इञ् प्रत्यय, विभक्तिलुक्, 'उडुलोमन्+इ' आदिवृद्धि, भसंज्ञा "नस्तद्धिते"ले टिलोप भयो, 'औडुलोमि' शब्द बन्यो, त्यसदेखि सु आयो, 'औडुलोमिः' सिद्ध भयो ।

**(वा.) लोम्न इति**– लोमन् शब्ददेखि अपत्य अर्थमा बहुत्वसंख्या (धेरै सन्तान) बुझिंदामा अकार प्रत्यय होस ।

**उडुलोमाः**– उडुलोम्नः अपत्यानि पुमांसः (उडुलोमाका छोराहरू) यस विग्रहमा यहाँ 'उडुलोमन्+ङस्'देखि "बाह्वादिभ्यश्च"लाई बाधेर अप्रत्यय भयो, ञित्, णित्, कित् प्रत्यय पर नहुनाले आदि वृद्धि भएन, भसंज्ञा र अकारको टिलोप भयो, 'उडुलोम' भयो, त्यसदेखि जस् आयो, 'उडुलोमाः' सिद्ध भयो । यो बाह्वादिगण, आकृतिगण छ ।

"अत इञ्" "बाह्वादिभ्यश्च" आदि सूत्रले अपत्य अर्थमा र गोत्र अर्थमा छुट्टै प्रत्यय बताइएका जतिशब्द छन्, ती देखिगोत्रापत्य अर्थमा पनि तिनै प्रत्यय हुन्छन् । किनकि अपत्यत्व अनन्तरमा पनि हुन्छ सान्तर (नाति पनाति)मा पनि हुन्छ ।

**अनृष्येति**– बिदादिगणमा जो ऋषिवाचक शब्ददेखि भिन्न शब्द छन्, तीदेखि अपत्य अर्थमा अञ् प्रत्यय होस्, ऋषिवाचक शब्ददेखि गोत्रापत्य अर्थमा अञ् प्रत्यय होस् ।

**बैदः**– बिद यो ऋषिवाचक शब्द हुनाले बिदस्य गोत्रापत्यम् (बिदको गोत्रापत्य) यस विग्रहमा 'बिद+ङस्'देखि "अनृष्यानन्तर्ये०" सूत्रले अञ् प्रत्यय भयो, विभक्तिलुक् भयो, 'बिद+अ' यहाँ आदिवृद्धि, बिदका अकारको लोप भयो, 'बैद' शब्द बन्यो, त्यसदेखि सु आयो, 'बैदः' सिद्ध भयो । औमा बैदौ हुन्छ ।

**बिदाः**– बिदस्य गोत्रापत्यानि पुमांसः (बिदका गोत्रापत्य पुरुषहरू) यस अर्थमा "अनृष्यानन्तर्ये०" यस सूत्रले 'बिद+ङ्स्'देखि अञ् प्रत्यय भयो, विभक्तिलुक् भयो, यहाँ गोत्रप्रत्ययकृत बहुत्व बुझिएकोले "यञञोश्च"ले यञ् प्रत्ययको लुक् भएको हुनाले, 'बिद्+अ' यहाँ आदिवृद्धि, अकारको लोप भएन 'बिद' यस्तै रह्यो, बिद शब्ददेखि जस् आयो, 'बिदाः' सिद्ध भयो । यसरी बैद शब्दका रूप- बैदः, बैदौ, बिदाः । बैदम् बैदौ, बिदान् आदि हुन्छन् ।

**पौत्रः**- पुत्रस्य अपत्यम् पुमान् (छोराको छोरा) यस विग्रहमा पुत्र ऋषि नहुनाले "अनृष्यान्तर्ये"ले आनन्तर्य अर्थात् अनन्तर अपत्य (छोरा) बुझिदाँ 'पुत्र+ङस्'देखि अञ् प्रत्यय भयो, विभक्तिलुक् भयो, आदिवृद्धि, भसंज्ञा अकारको लोप भयो, 'पौत्र' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पौत्रः' सिद्ध भयो । यस्तै औमा पनि पौत्रौ रूप हुन्छ ।

**पौत्राः**- पुत्रस्य अपत्यानि पुमांसः (छोराका छोराहरू) यहा 'पुत्र+ङस्'देखि पूर्ववत् अञ्

**१०१३. शिवादिभ्योऽण् ४।१।११२॥**

अपत्ये । शैवः । गाङ्गः ॥

**१०१४. ऋष्यन्धकवृष्णिकुरुभ्यश्च ४।१।११२॥**

ऋषिभ्यः–वासिष्ठः । वैश्वामित्रः । अन्धकेभ्यः–श्वाफल्कः । वृष्णिभ्यः–वासुदेवः । कुरुभ्यः–नाकुलः । साहदेवः ॥

**१०१५. मातुरुत्संख्यासंभद्रपूर्वायाः ४।१।११५॥**

संख्यादिपूर्वस्य मातृशब्दस्योदादेशः स्यादण् प्रत्ययश्च ।

---

प्रत्यय भयो, आदिवृद्धि, अकारको लोप भयो, 'पौत्र' शब्द बन्यो, त्यसदेखि जस् आयो, 'पौत्राः' सिद्ध भयो । यहाँ गोत्रापत्य अर्थमा अञ् प्रत्यय नगरेको हुनाले बहुत्व बुझिंदामा त्यसको लुक् भएन । यस्तै प्रकारले दौहित्र आदि शब्द पनि जान्नू । पुत्र शब्द, दुहितृ शब्द, बिदादिगणभित्र पर्दछन् ।

**शिवादिभ्य इति**- शिवादि गण पठित शब्ददेखि अपत्य अर्थमा अण् प्रत्यय होस् । यसपछि गोत्रापत्यमा भन्ने अर्थ निवृत्त भयो ।

**शैवः**- शिवस्यापत्यं पुमान् (शिवका छोरा ) यस अर्थमा 'शिव+ङस्'देखि "अत इञ्"ले इञ् प्रत्यय पायो, त्यसलाई बाधेर "शिवादिभ्योऽण्"ले अण् प्रत्यय भयो, आदिवृद्धि अकारको लोप भयो, शैव शब्द बन्यो, त्यसदेखि सु आयो, 'शैवः' सिद्ध भयो ।

**गाङ्गः**- गङ्गाया अपत्यं पुमान् (गङ्गाका छोरा) यस विग्रहमा 'गङ्गा+ङस्'देखि प्रकृत सूत्रले अण् भयो, आदिवृद्धि, अलोप भयो, 'गाङ्ग' शब्द बन्यो, त्यसदेखि सु आयो, 'गाङ्गः' सिद्ध भयो ।

**ऋष्यन्धकेति**- ऋषिवाचक शब्द अन्धकवंश वृष्णिवंश र कुरुवंशका वाचक शब्ददेखि पनि अपत्य अर्थमा अण् प्रत्यय होस् ।

**वासिष्ठः**- वसिष्ठस्यापत्यं पुमान् (वसिष्ठका छोरा) यस विग्रहमा 'वसिष्ठ+ङस्'देखि "ऋष्यन्धक०"ले अण् प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भयो, 'वासिष्ठ'शब्द बन्यो, त्यसदेखि सु आयो, 'वासिष्ठः' सिद्ध भयो ।

**वैश्वामित्रः**- विश्वामित्रस्य अपत्यम् पुमान् (विश्वामित्रका छोरा) यहाँ पनि ऋषिवाचक 'विश्वामित्र+ङस्'देखि "ऋष्यन्धक०"ले अण् भयो पूर्ववत् आदिवृद्धि, भसंज्ञा अकारको लोप आदि भयो, 'वैश्वामित्रः' शब्द बन्यो, त्यसदेखि सु आयो, 'वैश्वामित्रः' सिद्ध भयो ।

**श्वाफल्कः**- श्वफल्कस्यापत्यं पुमान् (श्वफल्कका छोरा) यस विग्रहमा श्वफल्क शब्द अन्धक वंशको व्यक्तिलाई कहने हुनाले 'श्वफल्क+ङस्'देखि "ऋष्यन्धक०"ले अण् प्रत्यय भयो, पूर्ववत् आदिवृद्धि, अलोप आदि भयो, 'श्वाफल्क' शब्द बन्यो, त्यसदेखि सु आयो, 'श्वाफल्कः' सिद्ध भयो ।

**वासुदेवः**- वसुदेवस्यापत्यं पुमान् (वसुदेवका छोरा) यस विग्रहमा वसुदेव वृष्णिवंशका एक व्यक्ति हुनाले 'वसुदेव+ङस्'देखि पूर्ववत् अण् प्रत्यय आदि प्रक्रिया भयो, 'वासुदेव'शब्द बन्यो, त्यसदेखि सु आयो, 'वासुदेवः' सिद्ध भयो ।

**नाकुलः**- नकुलस्य अपत्यम् पुमान् (नकुलका छोरा) यस विग्रहमा नकुल शब्द कुरु कुलका व्यक्तिलाई कहने हुँदा 'नकुल+ङस्'देखि पूर्ववत् "ऋष्यन्धकवृष्णिकुरुभ्यश्च"ले अण् प्रत्यय आदि प्रक्रिया भयो, 'नाकुल'शब्द बन्यो, त्यसदेखि सुआयो 'नाकुलः' सिद्ध भयो ।

**साहदेवः**- सहदेवस्य अपत्यम् पुमान् (सहदेवका छोरा) यस विग्रहमा सहदेव शब्द पनि कुरुकुलका व्यक्तिको वाचक हुनाले उक्त सूत्रले 'सहदेव+ङस्'देखि अण् प्रत्यय आदि प्रक्रिया भयो, साहदेव शब्द बन्यो, त्यसदेखि सु आयो, 'साहदेवः' सिद्ध भयो ।

**मातुरिति**- सङ्ख्यावाचक शब्द, सम् शब्द र भद्र शब्द पूर्वमा हुने मातृ शब्ददेखि अपत्य

द्वैमातुरः । षाण्मातुरः । सांमातुरः । भाद्रमातुरः ॥

**१०१५. स्त्रीभ्यो ढक् ४।१।१२०॥**

स्त्रीप्रत्ययान्तेभ्यो ढक् । वैनतेयः ॥

**१०१६. कन्यायाः कनीन च ४।१।११६॥**

चादण् । कानीनो व्यासः कर्णश्च ॥

**१०१७.राजश्वशुराद्यत् ४।१।१३७॥**

**वा.**(राज्ञो जातावेवेति वाच्यम्)

---

अर्थमा अण् प्रत्यय होस्, मातृ शब्दका स्थानमा ह्रस्व उकार आदेश पनि होस् ।

"अलोऽन्त्यस्य" लाएर मातृका ऋकारका स्थानमा उकार आदेश हुँदा "उरण् रपरः" लागेर उर् आदेश हुन्छ ।

**द्वैमातुरः(गणेश)**– द्वयोर्मात्रोरपत्यम् पुमान् (दुइटी आमाका छोरा) यस विग्रहमा 'द्वि+ओस्+मातृ+ओस्' यहाँ "तद्धितार्थोत्तरपदसमाहारे च"ले तद्धितार्थ विषयमा समास विभक्तिलुक् भएपछि "मातुरुत्संख्या०"ले अण् प्रत्यय भयो, ऋकारका स्थानमा उर् भयो, आदिवृद्धि भयो, 'द्वैमातुर' शब्द बन्यो, त्यसदेखि सु आयो, 'द्वैमातुरः' सिद्ध भयो ।

**षाण्मातुरः**– षण्णां मातृणामपत्यम् पुमान् (छ ओटी आमाका छोरा) यस अर्थमा 'षष्+आम्+मातृ+आम्' यहाँ उक्त सूत्रले समास विभक्तिलुक् भएर "मातुरुत्सङ्ख्या०"ले अण् प्रत्यय उर् आदेश, आदिवृद्धि भयो, 'षाण्मातुर' शब्द बन्यो, त्यसदेखि सु आयो, 'षण्मातुरः' सिद्ध भयो ।

**संमातुरः,भाद्रमातुरः**– संमातुरपत्यम्, (असल आमाको छोरा) भद्रमातुरपत्यम् यस अर्थमा 'संमातृ+ङस्' र 'भद्रमातृ+ङस्' देखि "मातुरुत्संख्या०"ले अपत्य अर्थमा अण् प्रत्यय र उर् आदेश भयो, आदिवृद्धि भयो, सांमातुर, भ्राद्रमातुर, यी दुई शब्द बने । यी दुवै शब्ददेखि सु आयो, ''सांमातुरः, भाद्रमातुरः' यी दुई रूप सिद्ध भए ।

**कन्याया इति**– कन्या शब्दका स्थानमा कनीन आदेश होस्, अपत्य अर्थमा । चकार पढ्नाले अण् प्रत्यय पनि होस् ।

**कानीनः**– कन्यायाः अपत्यम् (कन्याको छोरा) यस विग्रहमा 'कन्या+ङस्' यहाँ "कन्यायाः कनीन च"ले कन्याका स्थानमा कनीनआदेश र अण् प्रत्यय भयो, आदिवृद्धि, भसंज्ञा अकारको लोप भयो, 'कानीन' शब्द बन्यो, त्यसदेखि सु आयो, 'कानीनः' सिद्ध भयो । "सन्नियोगशिष्टानां०" यो न्याय लगाएर कनीनआदेश र अणप्रत्यय सँग सँगै हुन्छन् ।

**स्त्रीभ्य इति**– स्त्रीप्रत्ययान्त शब्ददेखि अपत्य अर्थमा, ढक् प्रत्यय होस् । ढक्का ककारको इत्संज्ञा, लोप हुन्छ ।

**वैनतेयः**– विनतायाः अपत्यम् (विनताको छोरा) यस विग्रहमा विनता शब्द स्त्रीप्रत्यय टाप् अन्तमा हुने हुनाले 'विनता+ङस्'देखि "स्त्रीभ्यो ढक्"ले ढक् प्रत्यय भयो, सुपको लुक् भयो, ढकारका स्थानमा "आयनेयीनीयियः०"ले एय् आदेश, आदिवृद्धि भयो, भसंज्ञा विनताका आकारको "यस्येति च"ले लोप भयो, 'वैनतेय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'वैनतेयः' सिद्ध भयो ।

**राजश्वशुरादिति**– राजन् शब्द र श्वशुर शब्ददेखि यत् प्रत्यय होस्, अपत्य अर्थमा ।

**(वा) राज्ञ इति**– राजन् शब्ददेखि जाति बुझिदामा मात्र यत् प्रत्यय होस् भन्नु ।

**१०१८. ये चाभावकर्मणोः ६।४।१६८॥**

यादौ तद्धिते परेऽन् प्रकृत्या स्यान्न तु भावकर्मणोः । राजन्यः । जातावेवेति किम् ?

**१०२०. अन् ६।४।१६७॥**

अन् प्रकृत्या स्यादणि परे । राजनः । श्वशुर्यः ॥

**१०२१.क्षत्त्राद् घः ४ । १ । १३८ ॥**

क्षत्रियः । जातावित्येव । क्षात्रिरन्यत्र ॥

**१०२२.रेवत्यादिभ्यष्ठक् ४।१।१४६॥**

**१०२३. ठस्येकः ७।३।५०॥**

अङ्गात्परस्य ठस्येकादेशः स्यात् ।

---

**ये चेति**– यकार आदिमा हुने तद्धित प्रत्यय पर भएमा अन्‌को प्रकृतिभाव होस्, भावकर्म अर्थमा त नहोस् ।

**राजन्यः**– राज्ञः अपत्यम् क्षत्रियः (राजाको छोरा क्षत्री) यो अर्थमा 'राजन्+ङस्'देखि पनि "राजश्वशुराद्यत्"ले यत् प्रत्यय पाएको "राज्ञो जातावेव" यो वार्तिकले जाति बुझिए मात्र होस् भनेकोले यहाँ जाति बुझिन्छ र यत् प्रत्यय भयो, विभक्तिलुक् भयो, 'राजन्+य' यहाँ "नस्तद्धिते"ले टिलोप पाएकोमा "ये चाभावकर्मणोः"ले प्रकृतिभाव भयो, राजन्य शब्द बन्यो, त्यसदेखि सु आयो, 'राजन्यः' सिद्ध भयो ।

**जातावेवेति किमिति**– राज्ञो जातावेव यो वार्तिकमा राजन् शब्ददेखि जाति अर्थमा मात्र यत् प्रत्यय होस् किन भनियो ? क्षत्रियजाति छैन भने यत् प्रत्यय नहोस् भन्नको निमित्त हो ।

**अन इति**– अन् यो प्रकृति भावले रहोस् अण् पर भएमा ।

**राजनः**– राज्ञोऽपत्यम् (राजाको छोरा) जो शूद्रा आदिमा उत्पन्न भएको हुनाले क्षत्रियजाति छैन, त्यसलाई बुझाउँदा 'राजन्+ङस्'देखि "राजश्वशुराद्यत्"ले यत् प्रत्यय पाएको "राज्ञो जातावेव" यो वार्तिकले निषेध गर्‍यो, अनि "तस्यापत्यम्" ले अण् प्रत्यय भयो, विभक्तिको लुक् भयो, 'राजन्+अ' यहाँ "नस्तद्धिते"ले पाएको टिलोपलाई बाधेर "अनः"ले प्रकृतिभाव भयो, 'राजन'शब्द बन्यो, त्यसदेखि सु आयो, 'राजनः' सिद्ध भयो ।

**श्वशुर्यः**– श्वशुरस्य अपत्यम् (ससुराको छोरा) यस अर्थमा 'श्वशुर+ङस्'देखि "राजश्वशुराद्यत्"ले यत् प्रत्यय भयो, विभक्तिलुक् भयो, "यस्येति च"ले अकारको लोप भयो, 'श्वशुर्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'श्वशुर्यः' सिद्ध भयो ।

**क्षत्रादिति**– क्षत्र शब्ददेखि घ प्रत्यय होस् जाति बुझिँदामा

**क्षत्रियः**– क्षत्रस्य अपत्यम् क्षत्रजातिः (क्षत्रीको छोरा क्षत्री) यस अर्थमा 'क्षत्र+ङस्'देखि "क्षत्राद् घः"ले घ प्रत्यय भयो, घकारको स्थानमा इय् आदेश भयो, क्षत्रका अकारको लोप भयो, 'क्षत्रिय'शब्द बन्यो, त्यसदेखि सु आयो, 'क्षत्रियः' सिद्ध भयो ।

**क्षात्रिरन्यत्रेति**– क्षत्रिय जाति बुझिन्न अरू नै जात बुझिन्छ भने घ प्रत्यय हुन्न ।

**क्षात्रिः**– क्षत्त्रस्य अपत्यम्(क्षेत्रीको छोरा) यस विग्रहमा 'क्षत्र+ङस्'देखि "अत इञ्"ले इञ् प्रत्यय भएर 'क्षात्रि'शब्द बन्यो, त्यसदेखि सु आयो, 'क्षात्रिः' सिद्ध भयो ।

**रेवत्यादीति**– रेवत्यादिगणपठित शब्ददेखि ठक् प्रत्यय होस् अपत्य अर्थमा ।

**ठस्येति**– अङ्गदेखि पर रहेका ठका स्थानमा इक आदेश होस् ।

---

रैवतिकः ॥

**१०२४. जनपदशब्दात्क्षत्त्रियादञ् ४।१।१६८॥**

जनपदक्षत्त्रियवाचकाच्छब्दादञ् स्यादपत्ये। पाञ्चालः। **वा.**(क्षत्त्रियसमानशब्दाज्जनपदात्तस्य राजन्यपत्यवत्)। पञ्चालानां राजा पाञ्चालः। **वा.** (पूरोरण् वक्तव्यः)। पौरवः। **वा.**(पाण्डोर्ड्यण्।) पाण्ड्यः ॥

---

**रैवतिकः**– रेवत्याः अपत्यम् (रेवतीको छोरा) यस विग्रहमा 'रवेती+ङस्'देखि "रेवत्यादिभ्यष्ठक्"ले ठक् प्रत्यय भयो, "ठस्येकः" यो सूत्रले ठका स्थानमा इक आदेश भयो। 'रेवती+इक' भयो, 'रेवती+इक' यहाँ आदिवृद्धि भयो, "यस्येति च"ले ईकारको लोप भयो, 'रैवतिक'शब्द बन्यो, त्यसदेखि सु आयो, 'रैवतिकः' सिद्ध भयो।

षष्ठचन्तसमर्थ प्रातिपदिकसंज्ञा र विभक्तिको लुक् गर्ने कुरा उल्लेख नगरिएको ठाउँमा पनि आफै संझनु पर्छ। किन भने अपत्यार्थक प्रत्यय सबै षष्ठचन्त समर्थदेखि हुन्छन्। तद्धितान्त भएपछि "कृत्तद्धितसमासाश्च"ले प्रातिपदिकसंज्ञा र "सुपो धातुप्रातिपदिकयोः"ले विभक्तिलुक् हुन्छ। अनि बनेको शब्दवाट स्वादिप्रत्यय आउँछन्। यो कुरा सर्वत्र संझनु पर्छ।

**जनपदेति**– जनपद र क्षत्त्रिय दुवैको वाचक शब्ददेखि अञ् प्रत्यय होस् अपत्य अर्थमा।

**पाञ्चालः**– पञ्चालस्य अपत्यम् (पञ्चालदेशका क्षेत्रीको छोरा) यो विग्रहमा 'पञ्चाल+ङस्'देखि अञ् प्रत्यय भयो, विभक्तिलुक्, आदिवृद्धि, अकारको लोप भयो, 'पाञ्चाल' शब्द बन्यो, त्यसदेखि सु आयो 'पाञ्चालः' सिद्ध भयो।

**(वा.) क्षत्रियसमानेति**– क्षत्रियवाचक शब्दले तुल्य भएको जनपदवाचक शब्द प्रकृतिक षष्ठचन्तसमर्थदेखि राजा बुझिँदामा पनि अपत्य अर्थमा जस्तै प्रत्यय होऊन्।

**पाञ्चालः**– पञ्चालानां राजा (पञ्चाल देशको राजा) यस अर्थमा 'पञ्चाल+आम्' देखि "क्षत्रियसमानशब्दात्" यस वार्तिकले अञ् प्रत्यय भयो, पूर्ववत् 'पाञ्चाल'शब्द बन्यो, त्यसदेखि सु आयो, 'पाञ्चालः' सिद्ध भयो। देशवाचक पञ्चाल शब्द बहुवचनान्त हुने हुनाले पञ्चालानां राजा यस्तो विग्रह राख्नु परेको हो।

**(वा.)पूरोरिति**– पूरु शब्ददेखि अपत्य अर्थमा अण् प्रत्यय होस्। पूरु शब्द देशवाची हैन त्यसकारण अपत्य अर्थमा अण् प्रत्यय हुन्छ। प्राग्दीव्यतीय अर्थमा "तस्यापत्यम्"ले अण् भइहाल्थ्यो, यहाँ पढेको तद्राजसंज्ञा गरेर बहुवचनमा लुक् गर्न निमित्त हो।

**पौरवः**- पूरोरपत्यम् (पूरुका छोरा) यस अर्थमा 'पूरु+ङस्'देखि "पूरोरण् वक्तव्यः" यो वार्तिकले अण्प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भयो, 'पौरव'शब्द बन्यो, त्यसदेखि सु आयो, 'पौरवः' सिद्ध भयो।

**(वा.)पाण्डोरिति**– जनपद र क्षत्त्रियवाचक पाण्डु शब्ददेखि अपत्य अर्थ र राजा अर्थमा ड्यण् प्रत्यय होस्। पाण्डु शब्दले देशविशेष र त्यो देशको राजा दुवैलाई कहन्छ।

**पाण्ड्यः**– पाण्डोरपत्यम् (पाण्डुदेशका राजाको छोरा) यस विग्रहमा 'पाण्डु+ङस्'देखि "पाण्डोर्ड्यण्" यो वार्तिकले ड्यण् प्रत्यय भयो, डित्त्वात् टिलोप (पाण्डुका उकारको लोप) भयो, आदिवृद्धि भयो, 'पाण्ड्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'पाण्ड्यः' सिद्ध भयो।

**पाण्ड्यः**– पाण्डूनां राजा (पाण्डु देशको राजा) यहाँ पनि 'पाण्डु+आम्'देखि ड्यण् प्रत्यय भयो, पूर्ववत् अरू प्रक्रिया पनि भयो, पाण्ड्य शब्द बन्यो, त्यसदेखि सु आयो, 'पाण्ड्यः' सिद्ध भयो।

---

**१०२५. कुरुनादिभ्यो ण्यः ४।१।१७२॥**

कौरव्यः । नैषध्यः ॥

**१०२६. ते तद्राजाः ४।१।१७४॥**

अञादयस्तद्राजसंज्ञाः स्युः ॥

**१०२७. तद्राजस्य बहुषु तेनैवास्त्रियाम् २।४।६५**

बहुष्वर्थेषु तद्राजस्य लुक् तदर्थकृते बहुत्वे न तु स्त्रियाम् । इक्ष्वाकवः । पञ्चालाः, इत्यादि ॥

---

**कुरुनेति**– जनपद र क्षत्रियवाचक कुरु शब्द र नकार आदिमा हुने शब्ददेखि राजा अर्थमा र अपत्य अर्थमा ण्य प्रत्यय होस् ।

**कौरव्यः**– कुरोरपत्यम् (कुरु राजाको छोरा) यस विग्रहमा 'कुरु+ङस्'देखि "कुरुनादिभ्यो०"ले ण्य प्रत्यय भयो, णकारको इत्संज्ञा, लोप भयो, विभक्तिलुक् भयो, 'कुरु+य' यहाँ आदिवृद्धि, गुण, अव् आदेश भयो, 'कौरव्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'कौरव्यः' सिद्ध भयो ।

**कौरव्यः**– कुरूणां राजा (कुरुदेशको राजा) यो विग्रहमा पनि 'कुरु+आम्'देखि उक्त सूत्रले ण्य प्रत्यय र पूर्ववत् प्रक्रिया भयो, कौरव्य शब्द बन्यो, त्यसदेखि सु आयो, 'कौरव्यः' सिद्ध भयो ।

**नैषध्यः**– निषधस्य अपत्यम् अथवा निषधानां राजा (निषधराजाको छोरा अथवा निषधदेशको राजा) यस विग्रहमा षष्ठ्यन्त निषध शब्ददेखि पूर्ववत् ण्य प्रत्यय र अरू प्रक्रिया पनि भयो, 'नैषध्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'नैषध्यः' सिद्ध भयो । अपत्य अर्थमा षष्ठयन्तसमर्थ 'निषध+ङस्' र राजा अर्थमा 'निषध+आम्' हुन्छ ।

**ते तदिति**– यस प्रकरणमा गरिएका अञ् आदि प्रत्ययहरू तद्राजसंज्ञक होऊन् ।

**तद्राजस्य बहुष्विति**– बहुत्वसंख्याविशिष्टरूप अर्थ बुझिँदामा तद्राजप्रत्ययको लुक् होस्, तद्राजप्रत्ययका अर्थले गराएको बहुत्व बुझिँदामा, स्त्रीलिङ्गमा त लुक् नहोस् ।

**इक्ष्वाकवः**– इक्ष्वाकोरपत्यानि पुमांसः इक्ष्वाकूणां जनपदानां राजानो वा (इक्ष्वाकुका अपत्यहरू अथवा इक्ष्वाकु जनपदको राजाहरू) यहाँ षष्ठयन्त इक्ष्वाकु शब्ददेखि "जनपदशब्दात् क्षत्रियात्०" यो सूत्रले र "क्षत्रियसमानशब्दात्०" यो वार्तिकले गरेको अञ् प्रत्ययलाई "ते तद्राजाः"ले तद्राज संज्ञा भएर "तद्राजस्य बहुषु०"ले तद्राजप्रत्ययकृत बहुत्व बुझिएकोले लुक् भयो, अञ् प्रत्यय पर नभएपछि आदिवृद्धि भएन, 'इक्ष्वाकु'शब्द यथावत् रह्यो, बहुत्वसंख्याको विवक्षा छँदैछ, त्यसदेखि जस् आयो, विभक्तिकार्य भयो 'इक्ष्वाकवः' सिद्ध भयो ।

**पञ्चालाः**– पञ्चालस्यापत्यानि पुमांसः, पञ्चालानां राजानो वा (पञ्चालराजाका छोराहरू वा पञ्चालदेशका राजाहरू) यहाँ षष्ठयन्त पञ्चाल शब्ददेखि पूर्ववत् "जनपदशब्दात्क्षत्रियादञ्"ले र "क्षत्रियसमानशब्दात् जनपदात्०"ले गरेको अञ् प्रत्ययको तद्राजसंज्ञा र लुक् भएपछि पञ्चाल शब्ददेखि जस् आयो, 'पञ्चालाः' सिद्ध भयो । अन्यत्र पनि तत्कृत बहुत्वमा तद्राज प्रत्ययको लुक् हुन्छ । तत्कृत बहुत्व नबुझिएमा भने लुक् हुँदैन । जस्तै :– पञ्चालानां राजा पाञ्चालः, प्रियः पाञ्चालो येषां ते प्रियपाञ्चालाः । यहाँ पाञ्चालको बहुत्व नभएर पाञ्चाललाई प्यारो मान्नेहरूको बहुत्व छ ।

---

१०२८. **कम्बोजाल्लुक् ४।१।१७५॥**

अस्मात्तद्राजस्य लुक् । कम्बोजः । कम्बोजौ ।

**वा.**(कम्बोजादिभ्य इति वक्तव्यम्) । चोलः । शकः । केरलः । यवनः ॥

**इत्यपत्याधिकारप्रकरणम् ॥२॥**

---

**कम्बोजादिति–** कम्बोज शब्ददेखि विधान गरिएका तद्राज प्रत्ययको बहुत्व नबुझिए पनि लुक् होस् । कम्बोज शब्द क्षत्रिय र जनपद दुवैको वाचक छ ।

**कम्बोजः, कम्बोजौ–** कम्बोजानां राजा, कम्बोजस्यापत्यं वा (कम्बोजदेशको राजा वा कम्बोज राजाको छोरा) यहाँ षष्ठचन्त कम्बोज शब्ददेखि "जनपदशब्दात् क्षत्रियादञ्"ले र "क्षत्रिय समानशब्दात् जनपदात्०" ले गरिएको अञ् प्रत्ययको बहुत्व नबुझिए पनि लुक् भयो, अतः आदिवृद्धि भएन, 'कम्बोज' यस्तै शब्द रह्यो, त्यसदेखि सु आयो, 'कम्बोजः' सिद्ध भयो । औ, जस्, आदि विभक्तिमा 'कम्बोजौ','कम्बोजाः' आदि रूप भए । बहुवचनमा त "तद्राजस्य०"ले पनि लुक् हुन्थ्यो, यो सूत्र आरम्भ गरेपछि यसैले लुक् भयो ।

**(वा.)कम्बोजादिभ्य इति–** कम्बोजादिगण पठित शब्ददेखि गरिएको तद्राज प्रत्ययको लुक् होस् भन्नु ।

**चोलः–** चोलस्यापत्यम् चोलानां राजा वा(चोलराजाको छोरा वा चोलदेशको राजा) यस विग्रहमा षष्ठचन्त चोल शब्ददेखि "जनपदशब्दात् क्षत्रियादञ्" यो सूत्र र "क्षत्रियसमान शब्दाज्जनपदात्तस्यराजन्यपत्यवत्" यो वार्तिकले गरिएको अञ् प्रत्ययको लुक् भयो र आदिवृद्धि भएन, 'चोल'शब्द यथावत् रह्यो, त्यसदेखि सु आयो, 'चोलः' सिद्ध भयो । औ, जस् आदि विभक्तिमा चोलौ, चोलाः, आदि रूप भए । यसले लुक् नभएको भए चौलः चौलौ, चोलाः यस्ता अनिष्ट रूप हुने थिए ।

यस्तै प्रकारले शक शब्ददेखि पूर्ववत् प्रत्यय गर्दा "कम्बोजादिभ्यः०"ले लुक् भएकोले शाकः यस्तो भएन, शकः भयो । त्यस्तै 'केरल'शब्दको 'कैरलः', 'यवन'शब्दको 'यावनः' यी रूप भएनन् । केरलः, यवनः यस्तै यथावत् रूप भए । "सोऽस्य निवासः"ले निवास अर्थमा अण् प्रत्यय हुदाँ त यहाँ काम्बोज, चौलः, शाकः, कैरलः, यावनः, इत्यादि रूप हुन्छन् ।

**अपत्याधिकार प्रकरण सकियो**

---

## अथ रक्ताद्यर्थकाप्रकरणम्

**१०२९. तेन रक्तं रागात् ४।२।१॥**

अण् स्यात् ।रज्यतेऽनेनेति रागः । कषायेण रक्तं वस्त्रं काषायम् ॥

**१०३०. नक्षत्रेण युक्तः कालः ४।२।३॥**

अण् स्यात् । **वा.**(तिष्यपुष्ययोर्नक्षत्राणि यलोप इति वाच्यम्) । पुष्येण युक्तं पौषमहः ॥

**१०३१. लुबविशेषे ४।२।४॥**

पूर्वेण विहितस्य लुप् स्यात्, षष्टिदण्डात्मकस्य कालस्यावान्तरविशेषश्चेन्न गम्यते । अद्य पुष्यः ॥

---

**अब रक्ताद्यर्थक प्रकरण आरम्भ गरिन्छ ।**

**तेन रक्तमिति–** रागवाचक शब्दप्रकृतिक तृतीयान्तसमर्थदेखि 'रक्तम्' यो अर्थमा अण् प्रत्यय होस् ।

**रज्यतेऽनेनेति–** रज्यतेऽनेन (रगाइँन्छ यसले) भन्दा रञ्ज धातुदेखि घञ् प्रत्यय भएर नकारको लोप भएपछि राग शब्द बन्दछ । राग शब्दले कुनै रँगाउने द्रव्यलाई बुझाँउछ । यो करण हुन्छ । करणमा तृतीया हुने हुनाले 'तेन' भनेर तृतीयान्तले निर्देश गरिएको हो ।

**कषायेणेति–** गेरुले रँगाएको कपडालाई काषाय भनिन्छ ।

**काषायम्–** कषायेण रक्तं वस्त्रम् (गेरुले रँगाएको कपडा) यस विग्रहमा 'कषाय+टा' देखि "तेन रक्तम्" यस सूत्रले अण् प्रत्यय, विभक्तिलुक् आदिवृद्धि, अकारको लोप भयो, 'काषाय'शब्द बन्यो, त्यसदेखि सु आयो, अम् भयो, 'काषायम्' सिद्ध भयो ।

**नक्षत्रेणेति–** नक्षत्रवाचक शब्दप्रकृतिक तृतीयान्त समर्थदेखि 'युक्तः कालः' यस अर्थमा अण् प्रत्यय होस् ।

**(वा.)तिष्यपुष्ययोरिति–** तिष्य शब्द र पुष्य शब्दको "नक्षत्रेण युक्तः" यो सूत्रले विधान गरिएको अण् प्रत्यय पर भएमा यकारको लोप होस् भन्नु ।

**पौषमहः–** पुष्येण युक्तम् अहः (पुष्य नक्षत्रले युक्त भएको दिन) यस अर्थमा 'पुष्य+टा'देखि "नक्षत्रेण युक्तः कालः" यो सूत्रले अणप्रत्यय, विभक्तिलुक्, आदिवृद्धि भएपछि 'पौष्य+अ' भयो "तिष्यपुष्ययोर्नक्षत्रणि०" यो वार्तिकले यकारको लोप भयो, 'पौष'शब्द भयो यो अहन् शब्दको विशेषण हुनाले नपुंसकलिङ्ग भयो, त्यसदेखि सु आयो, अम् भयो, 'पौषम्' सिद्ध भयो । दिवस शब्दको विशेषण भएमा 'पौषो दिवसः'यस्तो रूप हुन्छ ।

**लुबिति–** पूर्वसूत्रले विधान गरिएका अण् प्रत्ययको लुक् होस्, साठी घडी स्वरूप भएका कालको अवान्तर विशेष बुझिन्न भने ।

**अद्य पुष्यः–** (आज पुष्य नक्षत्र छ) यस विग्रहमा 'पुष्य+टा'देखि "नक्षत्रेण युक्तः कालः"ले अण् प्रत्यय भयो, साठी घडी स्वरूप काल अर्थात् एकदिन र रातको अवान्तरविशेष नबुझिएकोले

**१०३२. दृष्टं साम ४।२।७॥**

तेनेत्येव । वसिष्ठेन दृष्टं वासिष्ठं साम ॥

**१०३३. वामदेवाड्ड्यड्ड्यौ ४।२।९॥**

वामदेवेन दृष्टं साम वामदेव्यम् ॥

**१०३४. परिवृतो रथः ४।२।१०॥**

अस्मिन्नर्थेऽण् प्रत्ययो भवति । वस्त्रेण परिवृतो वास्त्रो रथः ॥

**१०३५. तत्रोद्धृतममत्रेभ्यः ४।२।१४॥**

शरावे उद्धृतः शाराव ओदनः ॥

**१०३६. संस्कृतं भक्षाः ४ । २ । १६ ॥**

सप्तम्यन्तादण् स्यात्संस्कृतेऽर्थे यत्संस्कृतं भक्षाश्चेत्ते स्युः । भ्राष्ट्रेषु संस्कृता भ्राष्ट्रा यवाः ॥

---

"लुबविशेषे"ले लुप् भयो, अण् प्रत्ययको लुप् भएकोले आदिवृद्धि भएन, 'पुष्य' यस्तै रह्यो, त्यसदेखि सु आयो, 'पुष्यः' सिद्ध भयो ।

**दृष्टमिति–** तृतीयान्तसमर्थदेखि दृष्टम् साम यस अर्थमा अण्प्रत्यय होस् ।

**वासिष्ठ साम–** वसिष्ठेन दृष्टं साम (वसिष्ठले देखिएको साम) यस विग्रहमा 'वसिष्ठ+टा'देखि "दृष्टं साम"ले अण् प्रत्यय भयो, विभक्तिलुक्, आदिवृद्धि, अकारको लोप भयो, 'वासिष्ठ'शब्द बन्यो, त्यसदेखि सु आयो, सुका स्थानमा अम् भयो, पूर्वरूप भयो । 'वासिष्ठम्' सिद्ध भयो, यो सामको विशेषण हुनाले, नपुंसक लिङ्ग भयो ।

**वामदेवादिति–** तृतीयान्त वामदेव शब्ददेखि दृष्टं साम यस अर्थमा ड्यत् र ड्य प्रत्यय होऊन् ।

**वामदेव्यम्–** वामदेवेन दृष्टम् साम (वामदेवले देखिएको साम) यस अर्थमा 'वामदेव+टा' यसदेखि "वामदेवाड्ड्यड्ड्यौ"ले ड्यत् प्रत्यय भयो, डकार तकारको अनुबन्ध लोप भयो, 'वामदेव+य' भयो, अकारको लोप भयो, 'वामदेव्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'वामदेव्यम्' सिद्ध भयो । ड्य प्रत्यय भएमा पनि यही रूप हुन्छ ड्यत्मा तकार पढेको स्वरितका निमित्त हो । डकारको ग्रहण "ययतोश्चातदर्थे"ले अन्तोदात्तत्व नहोस् भन्नका निमित्त हो ।

**परिवृत इति–** तृतीयान्त समर्थदेखि 'परिवृतः, रथः' यो अर्थमा अण् प्रत्यय होस् ।

**वास्त्रो रथः–** वस्त्रेण परिवृतो रथः (कपडाले बेरिएको रथ) भन्दा 'वस्त्र+टा'देखि अण् प्रत्यय, विभक्तिलुक्, आदिवृद्धि, अकारको लोप भयो, 'वास्त्र'शब्द बन्यो, यो वास्त्र शब्द रथको विशेषण हुनाले पुंलिङ्ग भयो, त्यसदेखि सु आयो, 'वास्त्रो रथः' सिद्ध भयो ।

**तत्रोद्धृतमिति–** पात्रवाचक सप्तम्यन्त समर्थदेखि 'उद्धृतम्' यस अर्थमा अण् प्रत्यय होस् ।

**शारावः–** शरावे उद्धृतः (कहतारोमा उठाएको) यस अर्थमा 'शराव+ङि' यसदेखि "तत्रोद्धृतम्"ले अण् प्रत्यय भयो, पूर्ववत् विभक्तिलुक्, आदिवृद्धि, अकारको लोप भयो, 'शाराव'शब्द बन्यो । यो शब्द ओदनको विशेषण हुँदा पुलिङ्ग भयो, त्यसदेखि सु आयो, 'शारावः' सिद्ध भयो । शाराव ओदनः (कहतारामा उठाइएको भात)

**सस्कृतमितिः–** सप्तम्यन्त समर्थदेखि संस्कृतम् यस अर्थमा अण् प्रत्यय होस्, जो संस्कृत छ त्यो खाद्यवस्तु बुझिन्छ भने ।

**भ्राष्ट्राः–** भ्राष्ट्रेषु संस्कृताः (कराहीमा संस्कार गरिएका अर्थात् भुटिएका) यस अर्थमा 'भ्राष्ट्र+सुप्'

**१०३७. साऽस्य देवता ४।२।२४॥**

इन्द्रो देवताऽस्येति ऐन्द्रं हविः । पाशुपतम् । बार्हस्पत्यम् ॥

**१०३८. शुक्राद्घन् ४।२।२६॥**

शुक्रियम् ॥

**१०३९. सोमाट्ट्यण् ४।२।३०॥**

सौम्यम् ।

**१०४०. वाय्वृतुपित्रुषसो यत् ४।२।३१॥**

---

देखि "संस्कृतं भक्षाः" यस सूत्रले अण् प्रत्यय भएर पूर्ववत् प्रक्रिया भयो र 'भ्राष्ट्र'शब्द बन्यो, त्यसदेखि जस् आयो, 'भ्राष्ट्राः' सिद्ध भयो । भ्राष्ट्रा यवाः (कराहीमा भुटिएका जौहरू)

**सास्येति**– प्रथमान्तसमर्थदेखि "अस्य देवता" यस अर्थमा अण् प्रत्यय होस् ।

**ऐन्द्रम्**– इन्द्रो देवता अस्य (इन्द्र छन् देवता यसका) यस अर्थमा 'इन्द्र+सु'देखि "साऽस्य देवता"ले अण् प्रत्यय भयो, विभक्तिलुक्, आदिवृद्धि र अकारको लोप भयो, 'ऐन्द्र'शब्द बन्यो, ऐन्द्र शब्द 'हविः' यसको विशेषण भएर नपुंसक लिङ्ग भयो, त्यसदेखि सु आयो, 'ऐन्द्रम्' सिद्ध भयो । ऐन्द्रं हविः (इन्द्र देवता भएको होमिने पदार्थ)

**पाशुपतम्**– पशुपतिर्देवता अस्य (पशुपति छन् देवता यसका) यो अर्थमा 'पशुपति+सु'देखि "अश्वपत्यादिभ्यश्च"ले अण् प्रत्यय, आदिवृद्धि, इकारको लोप भयो, 'पाशुपत'शब्द बन्यो, त्यसदेखि सु आयो, अम् भयो, 'पाशुपतम्' सिद्ध भयो । पाशुपतं हविः (पशुपतिलाई होमिने हवि)

**बार्हस्पत्यम्**– बृहस्पतिः देवता अस्य (बृहस्पति छन देवता यसका) यस विग्रहमा 'बृहस्पति+सु'देखि पूर्ववत् अण् प्रत्यय पाएकोमा बाधेर "दित्यदित्यादित्य०"ले ण्यप्रत्यय भयो, आदिवृद्धि हुँदा बृका ऋकारका स्थानमा आर्वृद्धि भयो, इकारको लोप भयो, 'बार्हस्पत्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'बार्हस्पत्यम्' सिद्ध भयो । बृहस्पति शब्दमा "दित्यादित्य०"ले अण्प्रत्ययलाई बाध्दछ तर पशुपति शब्द अश्वपत्यादिगणभित्र पर्ने हुनाले "अश्वपत्यादिभ्यश्च"ले अण् प्रत्यय नै हुन्छ, ण्यलाई अण्ले बाध्दछ । अण् प्रत्यय र ण्य प्रत्यय दुवै प्राग्दीव्यतीय हुन् ।

**शुक्रादिति**– शुक्र शब्दप्रकृतिक प्रथमान्तसमर्थदेखि घन् प्रत्यय होस् "अस्य देवता" यस अर्थमा ।

**शुक्रियम्**– शुक्रो देवताऽस्य (शुक्र छन् देवता यसका) यस विग्रहमा 'शुक्र+सु' देखि "सास्य देवता"ले पाएको अण्लाई बाधेर "शुक्राद् घन्"ले घन् प्रत्यय भयो, घकारको स्थानमा "आयनेयिनीयीयः०" ले इय् आदेश भयो, 'शुक्र+इय' भयो, शुक्रका अकारको लोप भयो, वर्णमेलन भयो, 'शुक्रिय'शब्द बन्यो, त्यसदेखि सु आयो, 'शुक्रियम्' सिद्ध भयो ।

**सोमादिति**– सोम शब्दप्रकृतिक प्रथमान्तसमर्थदेखि "अस्य देवता" यस अर्थमा टयण्प्रत्यय होस् । ट र ण दुवैको इत्संज्ञा भएर लोप हुन्छ ।

**सौम्यम्**– सोमो देवता अस्य (चन्द्रमा छन् देवता यसका) यो अर्थमा 'सोम+सु'देखि "सोमाट्टयण्"ले ट्यण् प्रत्यय भयो, विभक्तिलुक् भयो, 'सोम+य' यहाँ "तद्धितेष्वचामादेः"ले आदिवृद्धि, अकारको लोप भयो 'सौम्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'सौम्यम्' सिद्ध भयो ।

**वाय्वृतु इति**– वायु, ऋतु, पितृ, उषस्, यी शब्दप्रकृतिक प्रथमान्त समर्थदेखि 'अस्य देवता' यस अर्थमा यत् प्रत्यय होस् ।

वायव्यम् । ऋतव्यम् ॥

**१०४१. रीङ् ऋतः ७।४।२७॥**

अकृद्यकारे असार्वधातुके यकारे च्वौ च परे ऋदन्ताङ्गस्यरीङादेशः । "यस्येति च" । पित्र्यम् । उषस्यम् ॥

**१०४२. पितृव्यमातुलमातामहपितामहाः ४।२।३६॥**

एते निपात्यन्ते । पितुर्भ्राता पितृव्यः । मातुर्भ्राता मातुलः । मातुः पिता मातामहः । पितुः पिता पितामहः ॥

---

**वायव्यम्**– वायुर्देवता ऽस्य (वायु छन् देवता यसका) यस विग्रहमा पूर्ववत् "वाय्वृतुपित्रुषसो यत्"ले 'वायु+सु'देखि यत् प्रत्यय भयो, विभक्तिलुक् भयो, 'वायु+य' यहाँ "ओर्गुणः"ले गुण, अव् आदेश भयो, 'वायव्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'वायव्यम्' सिद्ध भयो ।

**ऋतव्यम्**– ऋतुर्देवता अस्य (ऋतु छन् देवता यसका) यस विग्रहमा 'ऋतु+सु'देखि "वाय्वृतुपित्रुषसो यत्"ले यत् प्रत्यय भयो, 'ऋतु+य', यहाँ ञित्, णित्, कित् कुनै प्रत्यय पर नहुनाले आदिवृद्धि भएन । गुण, अव् आदेश भयो, 'ऋतव्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'ऋतव्यम्' सिद्ध भयो ।

**रीङ् ऋत इति**– कृत्भिन्न यकार पर भएमा, सार्वधातुक भिन्न यकार परभएमा र च्वि प्रत्यय पर भएमा पनि ह्रस्व ऋकारान्त अङ्गका स्थानमा रीङ् आदेश होस् ।

**यस्येति चे ति**– "यस्येतिच" यो सूत्रले ईकारको लोप हुन्छ ।

**पित्र्यम्**– पितरो देवता अस्य (पितृहरू छन देवता यसका) यस अर्थमा 'पितृ+जस्' देखि "वाय्वृतुपित्रुषसो यत्"ले यत् प्रत्यय पितृ यहाँ कृत र सार्वधातुक भिन्न यकार पर हुनाले "रीङ् ऋतः"ले रीङ् आदेश भयो, अनुबन्ध लोप भयो, री यो "अलोऽन्त्यस्य" लाएर पितृका ऋकारका स्थानमा पाएकोमा त्यसलाई बाधेर "अनेकाल शित्०"ले सबैका स्थानमा पायो, त्यसलाई बाधेर "ङिच्च"ले अन्त्य अल् ऋकारका स्थानमा री आदेश भयो, 'पित्री+य' भयो, "यस्येति च"ले दीर्घ इकारको लोप भयो, 'पित्र्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पित्र्यम्' सिद्ध भयो ।

**उषस्यम्**– उषाः देवता अस्य (उषा (बिहान) देवी छन् देवता यसकी) यस अर्थमा उषस् शब्ददेखि पूर्व सूत्रले यत् प्रत्यय भयो, 'उषस्य' शब्द बन्यो, त्यसदेखि सु आयो, अम् भयो, 'उषस्यम्' सिद्ध भयो ।

**पितृव्येति**– पितृव्य, मातुल, मातामह, पितामह, यी शब्दहरू अर्थविशेषमा निपातन गरिन्छन् ।

**पितृव्यः(काका, चाचा)**– पितुर्भ्राता (पिताका भाइ) यस विग्रहमा 'पितृ+ङस्'देखि "पितृव्यमातुल०"ले व्यत् प्रत्यय निपातन भयो, पितृव्य शब्द बन्यो, त्यसदेखि सु आयो, 'पितृव्यः' सिद्ध भयो ।

**मातुलः(मामा)**– मातुर्भ्राता (आमाको भाई ) यस अर्थमा 'मातृ+ङस्'देखि उक्त सूत्रले डुलच् प्रत्यय निपातन भयो, 'मातृ+उल' भयो, डित्त्वसामर्थ्यात् टिलोप भयो, 'मातुल' शब्द बन्यो, त्यसदेखि सु आयो, 'मातुलः' सिद्ध भयो ।

**मातामहः(मामली हजुरबा)**– मातुः पिता (आमाका बाबु) यस अर्थमा 'मातृ+ङस्'देखि उक्त सूत्रले डामहच् प्रत्यय निपातन भयो, टिलोप भयो, 'मातामह' शब्द बन्यो, त्यसदेखि सु आयो, 'मातामहः' सिद्ध भयो ।

**पितामहः(हजुरबा)**– पितुः पिता (बाबुका बाबु) यस अर्थमा 'पितृ+ङस्'देखि डामहच् प्रत्यय निपातन भयो, टिलोप भयो, 'पितामह' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पितामहः' सिद्ध भयो । यहाँ टिलोपको निमित्त डकार, स्वरितको निमित्त चकार पढिएको हो ।

---

**१०४३. तस्य समूहः ४।२।३७॥**

काकानां समूहः काकम् ॥

**१०४४. भिक्षादिभ्योऽण् ४।२।३८॥**

भिक्षाणां समूहो भैक्षम् । गर्भिणीनां समूहो गार्भिणम् । इह

**वा.**(भस्याढे तद्धिते) । इति पुंवद्भावे कृते–

**१०४५. इनण्यनपत्ये ६।४।१६४॥**

अनपत्यार्थेऽणि परे इन् प्रकृत्या स्यात् । तेन नस्तद्धित इति टिलोपो न । युवतीनां समूहो यौवनम् ॥

**१०४६. ग्रामजनबन्धुभ्यस्तल् ४।२।४३॥**

तलन्तं स्त्रियाम् । ग्रामता । जनता । बन्धुता ।

---

**तस्येति**– षष्ठचन्त समर्थदेखि समूह अर्थमा अणप्रत्यय होस् ।

**काकम्**– काकानाम् समूहः (कौवाहरूको समूह) यस अर्थमा 'काक+आम्'देखि अणप्रत्यय भयो, 'काक+अ' भयो, आदि वृद्धि, अलोप, 'काक'शब्द बन्यो, त्यसदेख सु आयो, 'काकम्' सिद्ध भयो।

**बाकम्**– बकानां समूहः (बकुल्लाका समूह) यस विग्रहमा 'बक+आम्'देखि अणप्रत्यय भयो, 'बक+अ' यहाँ आदिवृद्धि, अकारको लोप भयो, 'बाक'शब्द बन्यो, त्यसदेखि सु आयो, 'बाकम्' यो रूप पनि सिद्ध हुन्छ ।

**भिक्षादिभ्य इति**– भिक्षादिगणपठित शब्दप्रकृतिक षष्ठचन्त समर्थदेखि समूह अर्थमा अणप्रत्यय होस् । भिक्षाशब्दमा "अचित्तहस्तिधेनोष्ठक्"ले पाएको ठक्लाई यो सूत्रले बाध्दछ । गर्भिणीशब्दमा "अनुदात्तादेरञ्"लाई बाध्दछ । अञ् प्रत्ययलाई बाधेर अणप्रत्यय गरेको "इनण्यनपत्ये" लगाउन हो ।

**भैक्षम्**– भिक्षाणां समूहः (भिक्षाको समूह) यस विग्रहमा षष्ठचन्त 'भिक्षा+आम्'देखि अणप्रत्यय भयो, 'भिक्षा+अ' यहाँ आदिवृद्धि, आकारलोप भयो, 'भैक्ष' शब्द बन्यो, त्यसदेखि सु आयो, 'भैक्षम्' सिद्ध भयो । 'भैक्षम् भिक्षाकदम्बकम्' (अमरकोश)

**गार्भिणम्**– गर्भिणीनां समूहः (गर्भिणीहरूको समूह) यस विग्रहमा 'गर्भिणी+आम्'देखि "तस्य समूहः"ले अण् प्रत्यय भयो, विभक्तिलुक्, 'गर्भिणी+अ' भएपछि यहाँ-

**वा० भस्येति**– भसंज्ञकअङ्गको पुंवद्भाव होस्, ढप्रत्यय भिन्न तद्धितसंज्ञक प्रत्यय पर भएमा । यो वार्तिकले पुंवद्भाव भयो अनि 'गर्भिन्+अ' भयो, अनि "नस्तद्धिते" ले टिलोप पाएमा–

**इनणीति**– अपत्यार्थभिन्न अण् प्रत्यय पर भएमा 'इन्' यो प्रकृतिभावले रहोस् । यो सूत्रले निषेध भयो, आदिवृद्धि भयो, णत्व भयो, 'गार्भिण' शब्द बन्यो, त्यसदेखि सु आयो, 'गार्भिणम्' सिद्ध भयो ।

**यौवनम्**– युवतीनां समूहः (युवतिहरूको समूह) यस विग्रहमा 'युवति+आम्'देखि अणप्रत्यय, विभक्तिलुक् भयो, "भस्याढे०"ले पुंवद्भाव, आदिवृद्धि भयो, यौवन्+अ भयो टिलोपलाई बाधेर "अन्"ले अन्को प्रकृतिभाव भयो, 'यौवन' शब्द बन्यो, त्यसदेखि सु आयो, 'यौवनम्' सिद्ध भयो । शतृप्रत्ययान्त युवती शब्द बाट समूह अर्थमा अण् प्रत्यय गरेमा त 'यौवतम्' यो रूप हुन्छ ।

**ग्रामजनेति**– ग्राम, जन, बन्धु, यी शब्दप्रकृतिक षष्ठ्यन्तसमर्थदेखि समूह अर्थमा तल् प्रत्यय होस् ।

**(वा) तलन्तमिति**– तल् प्रत्ययान्त शब्द स्त्रीलिङ्गमा होस् ।

**ग्रामता, जनता, बन्धुता**– ग्रामाणां समूहः (गाउँको समूह) यस विग्रहमा 'ग्राम+आम्'देखि "ग्रामजनबन्धुभ्यस्तल्"ले तल् प्रत्यय भयो, 'ग्राम+त' भयो, "तलन्त स्त्रियाम्" यस वार्तिकले

---

**वा.**(गजसहायाभ्यां चेति वक्तव्यम्) । गजता । सहायता । **वा.**(अह्नः खः क्रतौ) । अहीनः क्रतुः ॥

**१०४७. अचित्तहस्तिधेनोष्ठक् ४।२।४७॥**

**१०४८. इसुसुक्तान्तात्कः ७।३।५१॥**

इस्-उस्-उक्-तान्तात्परस्य ठस्य कः । साक्तुकम् । हास्तिकम् । धैनुकम् ॥

**१०४९. तदधीते तद्वेद ४।२।५९॥**

---

स्त्रीत्व बुझिएकोले टाप् प्रत्यय भयो, दीर्घ भयो, 'ग्रामता' शब्द बन्यो, त्यसदेखि सु आयो, लोप भयो, 'ग्रामता' सिद्ध भयो । यस्तै प्रकारले- जनानां समूहः (जनहरूको समूह) यस विग्रहमा 'जनता', बन्धूनां समूहः (दाज्यूभाइको समूह) यस विग्रहमा 'बन्धुता' यी रूप पनि पूर्ववत् सिद्ध भए ।

(**वा.**) **गजसहायेति**– गजशब्द र सहायशब्द प्रकृतिक षष्ठचन्तसमर्थदेखि पनि समूह अर्थमा तल् प्रत्यय होस् भन्नू ।

**गजता**– गजानां समूहः (हात्तीको झुण्ड) भन्दा 'गज+आम्'देखि उक्त वार्तिकले तल्प्रत्यय भयो, 'गजता' शब्द बन्यो, त्यसदेखि सु आयो, 'गजता' सिद्ध भयो ।

**सहायता**– सहायानां समूहः (साथीको समूह) यस अर्थमा पनि पूर्ववत् उक्त वार्तिकले तल्प्रत्यय भयो, 'सहायता' शब्द बन्यो, त्यसदेखि सु आयो, लोप भयो, 'सहायता' सिद्ध भयो ।

(**वा.**) **अह्न इति**– अहन् शब्द प्रकृतिक षष्ठचन्तसमर्थदेखि समूह अर्थमा ख प्रत्यय होस्, क्रतुसाध्य भएमा ।

**अहीनः क्रतुः**- अह्नां समूहेन साध्यः क्रतुः (धेरै दिन लगाएर साध्य हुने यज्ञ) यस विग्रहमा 'अहन्+आम्'देखि "अह्नः खः क्रतौ" यस वार्तिकले ख प्रत्यय भयो, खका स्थानमा "आयनेयिनीयीयः०"ले ईन् आदेश भयो, 'अहन्+ईन' भयो, टिलोप भयो, 'अहीन' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अहीनः' सिद्ध भयो । यहाँ 'अहीनः' यो 'क्रतुः' यसको विशेषण छ ।

**अचित्तेति**– चित्तरहित पदार्थलाई कहने शब्द, हस्ति शब्द र धेनु शब्दप्रकृतिक षष्ठ्यन्त समर्थदेखि समूह अर्थमा ठक् प्रत्यय होस् ।

इस्, उस् र उक् प्रत्याहार अनि तवर्ण अन्तमा हुने शब्ददेखि पर रहेका ठकारका स्थानमा ककार होस् ।

**साक्तुकम्**– सक्तूनां समूहः (सातुको समूह) यस विग्रहमा षष्ठयन्त सक्तु शब्ददेखि चित्तरहित वस्तुवाचक हुनाले "अचित्तहस्तिधेनोष्ठक्"ले ठक् प्रत्यय भयो, ठकारकास्थानमा "ठस्येकः"ले इक आदेश पाएकोमा "इसुसुक्तान्तात्०"ले उगन्त सक्तु शब्ददेखि पर रहेकोले ठकारका स्थानमा ककार आदेश भयो, 'साक्तुक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'साक्तुकम्' सिद्ध भयो ।

**हास्तिकम्**– हस्तिनां समूहः (हात्तीको झुण्ड) यस विग्रहमा 'हस्तिन्+आम्' यसदेखि "अचित्तहस्ति०"ले ठक् प्रत्यय भयो, विभक्तिको लुक् भयो, "ठस्येकः"ले ठकारका स्थानमा इक, आदिवृद्धि भयो, 'हास्तिन्+इक' भयो, "नस्तद्धिते"ले टिलोप भयो, 'हास्तिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'हास्तिकम्' सिद्ध भयो ।

**धैनुकम्**– धेनूनां समूहः (गाईको समूह) यस विग्रहमा 'धेनु+आम्'देखि "अचित्तहस्ति०"ले ठक् प्रत्यय भयो, "इसुसुक्०"ले उगन्तदेखि पर रहेकोले ठकारका स्थानमा ककार भयो, "किति च"ले आदिवृद्धि भयो, 'धैनुक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'धैनुकम्' सिद्ध भयो ।

**तदिति**– द्वितीयान्तसमर्थदेखि 'अधीते' यस अर्थमा र 'वेद' यस अर्थमा पनि अण् प्रत्यय होस् ।

---

**१०५०. न य्वाभ्यां पदान्ताभ्यां पूर्वौ तु ताभ्यामैच् ७।३।३॥**

पदान्ताभ्यां यकारवकाराभ्यां परस्य न वृद्धिः, किं तु ताभ्यां पूर्वौ क्रमादैचावागमौ स्तः। व्याकरणमधीते वेद वा वैयाकरणः ॥

**१०५१. क्रमादिभ्यो वुन् ४।२।६१॥**

क्रमकः । पदकः । शिक्षकः । मीमांसकः ॥

**इति रक्ताद्यर्थकप्रकरणम् ॥**

---

**न य्वाभ्यामिति**-- पदान्त यकार वकारदेखि पर रहेका अच्का स्थानमा वृद्धि नहोस् किन्तु त्यसदेखि पूर्व क्रमैले ऐ, औ, यी आगम होऊन् ।

**वैयाकरणः**– व्याकरणम् अधीते वा वेद (व्याकरण पढ्छ अथवा जान्दछ) यस विग्रहमा 'व्याकरण+अम्' यसदेखि उक्त सूत्र "तदधीते०"ले अण् प्रत्यय भयो, 'व्याकरण+अ' भयो, आदिवृद्धि पाएकोमा बाधेर "न य्वाभ्यां०"ले यकारदेखि अगाडि ऐकार आगम हुँदा 'वैयाकरण+अ' भयो, अकारको लोप भयो, 'वैयाकरण' शब्द बन्यो, त्यसदेखि सु आयो, 'वैयाकरणः' सिद्ध भयो ।

**क्रमादिभ्य इति**– क्रमादि शब्दप्रकृतिक द्वितीयान्त समर्थदेखि वुन् प्रत्यय होस्, अधीते अथवा वेद यस अर्थमा । नकार इत्संज्ञक छ वुका स्थानमा अक हुन्छ ।

**क्रमकः(क्रम पाठ जान्ने ब्राह्मण)**– क्रमम् अधीते वेद वा (क्रम पढ्दछ अथवा जान्दछ) यस विग्रहमा 'क्रम+अम्'देखि "क्रमादिभ्यो वुन्"ले वुन् प्रत्यय भयो, "युवोरनाकौ"ले वुका स्थानमा अक आदेश भयो, विभक्तिलोप, भसंज्ञक अकारको लोप भयो, 'क्रमक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'क्रमकः' सिद्ध भयो ।

**पदकः**– पदमधीते वेद वा (पदपाठ पढ्दछ अथवा जान्दछ) यस विग्रहमा 'पद+अम्'देखि पूर्ववत् वुन् प्रत्यय आदि प्रक्रिया भएर 'पदक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पदकः' सिद्ध भयो ।

**शिक्षकः**– शिक्षामधीते वेद वा (शिक्षा शास्त्र पढ्छ अथवा जान्दछ) यस विग्रहमा 'शिक्षा+अम्'देखि उक्त सूत्रले वुन् प्रत्यय आदि प्रक्रिया भएर 'शिक्षक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'शिक्षकः' सिद्ध भयो ।

**मीमांसकः**– मीमांसाम् अधीते वेद वा (मीमांसा शास्त्र पढ्छ अथवा जान्दछ) यस विग्रहमा 'मीमासा+अम्'देखि वुन् प्रत्यय आदि प्रक्रिया भएर 'मीमांसक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'मीमांसकः' सिद्ध भयो ।

**रक्ताद्यर्थप्रकरण समाप्त भयो ।**

-----------------

## अथ चातुरर्थिकप्रकरणम्

**१०५२. तदस्मिन्नस्तीति देशे तन्नाम्नि ४।२।६७॥**

उदुम्बराः सन्त्यस्मिन्देशे औदुम्बरो देशः ॥

**१०५३. तेन निर्वृत्तम् ४।२।६८॥**

कुशाम्बेन निर्वृत्ता नगरी कौशाम्बी ॥

**१०५४. तस्य निवासः ४।२।६९॥**

शिबीनां निवासो देशः शैबः ॥

---

**अब चातुरर्थिक प्रकरण आरम्भ गरिन्छ ।**

यो चातुरर्थिक प्रकरणमा चार सूत्रले चार अर्थमा प्रत्यय गरिन्छ ।

१. "तदस्मिन्नस्तीति देशे०" यो सूत्रले (देशलाई बुझाउँदा 'त्यो यहाँ छ' भन्ने अर्थमा ।)

२. "तेन निर्वृत्तम्" यो सूत्रले (देशलाई नै बुझाउँदा 'उसले बनाएको' भन्ने अर्थमा ।)

३. "तस्य निवासः" (देशलाई नै बुझाउँदा 'त्यसको निवास' भन्ने अर्थमा ।)

४. "अदूरभवश्च" (देशलाई नै बुझाउँदा 'त्यसदेखि नजीकै रहेको' भन्ने अर्थमा ।)

यसैकारण यो प्रकरणलाई चातुरर्थिक भनिएको हो । 'चतुर्णामर्थानां समाहारः, चतुरर्थी, चतुरर्थ्याम् भवाश्चातुरर्थिकाः' यो विग्रह हो । चतुरर्थी शब्द अध्यात्मादिगणभित्र पर्ने हुनाले ठञ् प्रत्यय हुन्छ ।

**तदस्मिन्निति–** प्रथमान्तसमर्थदेखि 'अस्मिन् अस्ति' यस अर्थमा त्यही नाम भएको देशलाई कहँदामा अण् प्रत्यय होस् ।

**औदुम्बरः–** उदुम्बराः सन्ति अस्मिन्देशे (डुम्रीकारूख छन् यो देशमा) यस विग्रहमा 'उदुम्बर+जस्' यसदेखि "तदस्मिन्नस्ति०" यो सूत्रले अण् प्रत्यय भयो, विभक्तिको लुक् भयो, 'उदुम्बर+अ' भयो, आदिवृद्धि भयो, 'औदुम्बर'शब्द बन्यो, त्यसदेखि सु आयो, 'औदुम्बरः' सिद्ध भयो । यो देशको विशेषण भयो, 'औदुम्बरो देशः' (डुम्री ज्यादा भएको देश)

**तेनेति–** तृतीयान्तसमर्थदेखि 'निर्वृत्तम्' (संपादन गरिएको) यो अर्थमा अण् प्रत्यय होस्, त्यो नाम भएको देश वाच्य भएमा ।

**कौशाम्बी–** कुशाम्बेन निर्वृत्ता नगरी (कुशाम्ब राजाले बनाएको नगरी) यस विग्रहमा 'कुशाम्ब+टा'देखि "तेन निर्वृत्तम्"ले अण् प्रत्यय भयो, आदिवृद्धि, अकार लोप भयो, 'कौशाम्ब'शब्द भयो, यो नगरीको विशेषण हुनाले स्त्रीत्व बुझियो र "टिड्ढाणञ्०"ले ङीप् प्रत्यय भयो, अकारको लोप भयो, 'कौशाम्बी'शब्द बन्यो, त्यसदेखि सु आयो, लोप भयो, 'कौशाम्बी' भयो ।

**तस्येति–** षष्ठयन्तसमर्थदेखि निवासः यो अर्थमा अण् प्रत्यय होस्, प्रत्ययान्त शब्दले देशलाई बुझाउँछ भने ।

**शैबः–** शिबीनां निवासो देशः (शिबिहरूको बस्ने देश) यस विग्रहमा 'शिबि+आम्'देखि "तस्य निवासः"ले अण् प्रत्यय भयो, 'शिबि+अ' भयो, आदिवृद्धि भयो, 'शैबि+अ' भयो, इकारको लोप भयो, 'शैब' शब्द भयो, त्यसदेखि सु आयो, 'शैबः' सिद्ध भयो ।

---

**१०५५. अदूरभवश्च ४।२।७०।।**

विदिशाया अदूरभवं नगरं वैदिशम् ॥

**१०५६. जनपदे लुप् ४।२।८१।।**

जनपदे वाच्ये चातुरर्थिकस्य लुप् ॥

**१०५७. लुपि युक्तवद्व्यक्तिवचने १।२।५१।।**

लुपि सति प्रकृतिवल्लिङ्गवचने स्तः । पञ्चालानां निवासो जनपदः पञ्चालाः । कुरवः । अङ्गाः । वङ्गाः । कलिङ्गाः ॥

**१०५८. वरणादिभ्यश्च ४।२।८२।।**

अजनपदार्थ आरम्भः । वरणानामदूरभवं नगरं वरणाः ॥

---

**अदूरभवश्चेति**– षष्ठ्यन्तसमर्थदेखि 'अदूरभवः'(टाढा नभएको) यस अर्थमा अण् प्रत्यय होस्, प्रत्ययान्त शब्दले देश बुझाउँछ भने ।

**वैदिशः**– विदिशाया अदूरभवम् (विदिशाबाट नजीकै रहेको) यस विग्रहमा 'विदिशा+ङस्'देखि "अदूरभवश्च" यो सूत्रले अण् प्रत्यय भयो, 'विदिशा+अ' भयो, आदिवृद्धि, आकारलोप भयो, 'वैदिश'शब्द बन्यो, यो नगरको विशेषण भएकोले नपुंसकलिङ्गी भयो, त्यसदेखि सु आयो, 'वैदिशम्' सिद्ध भयो ।

**जनपद इति**– उक्त चातुरर्थिक प्रत्ययको लुप् होस्, यदि लुबन्त प्रातिपदिकले जनपदलाई बुझाउँछ भने ।

**लुपीति**– लुप् प्रत्ययले लोप भएपछि प्रकृतिको समान लिङ्ग र वचन होऊन् ।

**पञ्चालाः**– पञ्चालानां निवासो जनपदः (पञ्चालदेशवासीहरूको वासस्थान भएको जनपद) यस विग्रहमा "सोऽस्य निवासः" यस सूत्रले 'पञ्चाल+आम्'देखि अण् प्रत्यय भयो, विभक्तिलुक् भयो, अण् प्रत्ययको "जनपदे लुप्"ले लुप् भयो, 'पञ्चाल' यस्तै रह्यो, "लुपि युक्तवद्०" यो सूत्रले प्रकृति जस्तै लिङ्ग र वचन हुन्छन् भनेकोले 'पञ्चाल'शब्द पुलिङ्ग र बहुवचन हुनाले यहाँ पनि पुंलिङ्ग र बहुवचन भयो, 'पञ्चालाः' सिद्ध भयो ।

**कुरवः**– कुरूणां निवासो जनपदः (कुरुहरूको वासस्थान जनपद) यस विग्रहमा 'कुरु+आम्'देखि "सोऽस्य निवासः"ले अण् प्रत्यय, विभक्तिलुक्, अण् प्रत्ययको पनि "जनपदे"ले लुप् भयो, "लुपि युक्तवद्०" लगाएर पुलिंग र बहुवचनान्त भयो, 'कुरवः' सिद्ध भयो ।

**अङ्गाः,वङ्गाः,कलिङ्गाः**– अङ्गानां निवासो जनपदः (अङ्गदेशवासीहरूको वास स्थान जनपद) यस अर्थमा 'अङ्ग+आम्' यसदेखि अण् प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भयो, 'अङ्ग' शब्द बन्यो, त्यसदेखि जस् आयो, 'अङ्गाः' सिद्ध भयो । त्यस्तै प्रकारले- वङ्गानां निवासो जनपदः यस विग्रहमा पूर्ववत् अण् प्रत्यय, लुप् प्रकृतिवत् लिङ्गवचन भएर 'वङ्गाः' यो रूप र कलिङ्गानां निवासो जनपदः यस विग्रहमा पनि पूर्ववत् अण् आदि प्रक्रिया भएर 'कलिङ्गाः' यो रूप सिद्ध हुन्छ ।

**वरणेति**– वरणादिगण पठितशब्ददेखि विधान गरिएको चातुरर्थिक प्रत्ययको लुप् होस् ।

**अजनपदेति**– लुबन्त प्रातिपदिकले जनपद नबुझाए पनि लुप् गर्न यो सूत्रको विधान गरिएको हो ।

**वरणाः**– वरणानामदूरभवं नगरम् (सिप्लीकानका रूखहरूदेखि नजीकै रहेको देश) यस विग्रहमा 'वरण+आम्'देखि अण् प्रत्यय, विभक्तिलुक्, अण्को लुप् भयो, 'वरण'शब्द नै रह्यो, प्रकृतिवत् लिङ्गवचन हुँदा त्यसदेखि जस् आयो, 'वरणाः' सिद्ध भयो । वरणाया नदीविशेषस्य अदूरभवं नगरम् यस्तो विग्रह गरेमा एकवचनान्त 'वरणा' यस्तो रूप हुन्छ ।

---

**१०५९. कुमुदनडवेतसेभ्यो ड्मतुप् ४।२।८७॥**

**१०६०. झयः ८।२।१०॥**

झयन्तान्मतोर्मस्य वः । कुमुद्वान् । नड्वान् ॥

**१०६१. मादुपधायाश्च मतोर्वोऽयवादिभ्यः ८।२।९॥**

मवर्णावर्णान्तान्मवर्णावर्णोपधाच्च यवादिवर्जितात्परस्य मतोर्मस्य वः । वेतस्वान् ॥

**१०६२. नडशादाड्ड्वलच् ४।२।८८॥**

नड्वलः । शाद्वलः ॥

**१०६३. शिखाया वलच् ४।२।८९॥**

शिखावलः ॥

## इति चातुरर्थिकप्रकरणम् ॥४॥

---

**कुमुदेति**– कुमुद शब्द नड शब्द, वेतस शब्द, प्रकृतिक सुबन्तसमर्थदेखि ड्मतुप् प्रत्यय होस्, चातुरर्थिक अर्थमा ।

**झय इति**– झय् प्रत्ययान्त शब्ददेखि पर रहेका मतुप्का मकारका स्थानमा वकार आदेश होस् ।

**कुमुद्वान्**– कुमुदाः सन्ति अस्मिन्देशे (कुमुदहरू छन् यो देशमा) यस विग्रहमा 'कुमुद+जस्'देखि "कुमुदनडवेतसेभ्यो०"ले ड्मतुप् प्रत्यय भयो, डकार र उप्को अनुबन्धलोप भयो, अकारको टिलोप भयो, 'कुमुद्+मत्' भयो, "झयः"ले मकारका स्थानमा वकार भयो, 'कुमुद्वत्'शब्द बन्यो, त्यसदेखि सु आयो, 'कुमुद्वान्' सिद्ध भयो ।

**नड्वान्**– नडाः सन्ति अस्मिन्देशे (नर्कटहरू छन् यो देशमा) यस विग्रहमा 'नड+जस्'देखि "कुमुदनडवेतसेभ्यो०"ले ड्मतुप्, विभक्तिलुक्, टिलोप भयो, 'नड्वत्'शब्द बन्यो, त्यसदेखि सु आयो, 'नड्वान्' सिद्ध भयो ।

**मादिति**– मवर्ण, अवर्ण अन्तमा हुने र मवर्ण, अवर्ण उपधामा हुने यवादि शब्द भिन्न शब्ददेखि पर रहेका मतुप्का मकारका स्थानमा वकार होस् ।

**वेतस्वान्**– वेतसाः सन्ति अस्मिन देशे (वेतहरू छन् यो देशमा) यस विग्रहमा 'वेतस+जस्'देखि "कुमुदनडवेतसेभ्यो०"ले ड्मतुप् प्रत्यय भयो, सुलोप, टिलोप भयो, 'वेतस्+मत्' भयो, यहाँ "मादुपधायाश्च०"ले अवर्ण उपधामा हुने यवादिगणपठित शब्ददेखि भिन्न वेतस् शब्ददेखि पर हुनाले मतुप्का मकारका स्थानमा वकार भयो, 'वेतस्वत्'शब्द बन्यो, त्यसदेखि सु आयो, 'वेतस्वान्' सिद्ध भयो ।

**नडशाददिति**– नड शब्द र शाद शब्द, प्रकृतिक सुबन्तसमर्थदेखि चातुरर्थिक अर्थमा ड्वलच् प्रत्यय होस् ।

**नड्वलः**– नडाः सन्ति अस्मिदेशे (नर्कटहरू छन् यस देशमा) यस अर्थमा 'नड+जस्'देखि "नडशादाद्०"ले ड्वलच्प्रत्यय भयो, विभक्तिलुक्, डित्त्वात्, टिलोप भयो, 'नड्वल'शब्द बन्यो, त्यसदेखि सु आयो, 'नड्वलः' सिद्ध भयो ।

**शिखाया इति**– शिखा शब्द प्रकृतिक सुबन्तसमर्थदेखि वलच् प्रत्यय होस्, चातुरर्थिक अर्थमा ।

**शिखावलः**– शिखाः सन्ति अस्मिन्देशे (शिखा धेरै छन् यस देशमा) यस विग्रहमा 'शिखा+जस्'देखि "शिखाया वलच्"ले वलच् प्रत्यय भयो, विभक्तिलुक् भयो, 'शिखावल' बन्यो, त्यसदेखि सु आयो, 'शिखावलः' सिद्ध भयो । यो 'शिखावल'शब्द देशवाचक हो । मयूरवाचक 'शिखावल'शब्द त "दन्तशिखात्संज्ञायाम्" यो सूत्रले वलच् प्रत्यय भएर मत्वर्थीयप्रकरणमा बन्दछ ।

**चातुरर्थिक प्रकरण समाप्त भयो ।**

---------------

## अथ शैषिकप्रकरणम्

**१०६४. शेषे ४।२।९२॥**

अपत्यादिचतुरर्थ्यन्तादन्योऽर्थः शेषस्तत्राणादयः स्युः । चक्षुषा गृह्यते चाक्षुषं रूपम् । श्रावणः शब्दः । औपनिषदः पुरुषः । दृषदि पिष्टा दार्षदाः सक्तवः । चतुर्भिरुह्यं चातुरं शकटम् । चतुर्दश्यां दृश्यते चातुर्दशं रक्षः । "तस्य विकारः" इत्यतः प्राक् शेषाधिकारः ॥

**१०६५.राष्ट्रावारपाराद् घखौ ४।२।९३॥**

आभ्यां क्रमाद् घखौ स्तः शेषे । राष्ट्रे जातादिः राष्ट्रियः ।

---

**अब शैषिक प्रकरण शुरू हुन्छ ।**

**शेष इति–** तस्यापत्यम्देखि लिएर चतुरर्थीसम्मको अर्थदेखि भिन्न अर्थलाई शेष भनिन्छ, त्यस अर्थमा सुबन्तसमर्थदेखि अण् आदि र घ आदि प्रत्यय होऊन् । अण् आदि भन्नाले ण्य, नञ्, स्नञ् आदि र घादि भन्नाले वक्ष्यमाण सूत्रले गरिने घ, ख आदि प्रत्यय हुन् । शेष अर्थमा विधान गरिने प्रत्ययलाई शैषिक भनिन्छ ।

**चाक्षुषम् रूपम्–** चक्षुषा गृह्यते (चक्षुरिन्द्रियले ग्रहण गरिन्छ) यस विग्रहमा 'चक्षुष्+टा'देखि "शेषे"ले अण् प्रत्यय, विभक्तिलुक् आदिवृद्धि भयो, 'चाक्षुष'शब्द भयो, त्यसदेखि सु आयो, 'चाक्षुषम्' सिद्ध भयो । यो रूपको विशेषण हो ।

**श्रावणःशब्दः–** श्रवणेन गृह्यते (श्रोत्रेन्द्रियले ग्रहण गरिन्छ) यस विग्रहमा 'श्रवण+टा'देखि "शेषे" ले अण् प्रत्यय, विभक्तिलुक्, आदिवृद्धि, अकारको लोप भयो, 'श्रावण'शब्द बन्यो, त्यसदेखि सु आयो, 'श्रावणः' सिद्ध भयो । यो शब्दको विशेषण भयो । श्रोत्रेन्द्रियद्वारा ग्रहण गरिने शब्द हो ।

**चातुरम् शकटम्-** चतुर्भिरुह्यते (चार ओटाले बोकिन्छ) यस विग्रहमा 'चतुर्+भिस्'देखि पूर्वसूत्रले अण् प्रत्यय, आदिवृद्धि भएर 'चातुर'शब्द बन्यो, चातुर शब्ददेखि नपुंसकलिङ्गमा सु आयो, 'चातुरम्' सिद्ध भयो । यो शकटको विशेषण भयो ।

**चातुर्दशं रक्षः–** चतुर्दश्यां दृश्यते (चतुर्दशीमा देखिन्छ) यस विग्रहमा 'चतुर्दशी+ङि'देखि पूर्ववत् अण् प्रत्यय, आदिवृद्धि, ईकारको लोप भयो र 'चातुर्दश'शब्द बन्यो, यो 'रक्षः'को विशेषण हुनाले नपुंसक लिङ्ग भयो, सु आयो, 'चातुर्दशं रक्षः' सिद्ध भयो ।

शेषेको अधिकार "तस्य विकारः" यो सूत्रदेखि पूर्वसम्म हुन्छ ।

**राष्ट्रेति–** राष्ट्रशब्द र अवारपार शब्द प्रकृतिक सुबन्तसमर्थदेखि क्रमैले घ र ख प्रत्यय होऊन् शेष अर्थमा ।

**राष्ट्रियः–** राष्ट्रे जातः, राष्ट्रे भवः (राष्ट्रमा जन्मेको, राष्ट्रमा भएको) आदि विग्रहमा 'राष्ट्र+ङि'देखि "शेषे"ले अण् प्रत्यय पायो, त्यसलाई बाधेर "राष्ट्रावारपाराद्०" यो सूत्रले घ

---

अवारपारीणः । **वा.** (अवारपाराद्विगृहीतादपि विपरीताच्चेति वक्तव्यम्) । अवारीणः । पारीणः । पारावारीणः । इह प्रकृतिविशेषाद् घादयष्टचुटचुलन्ताः प्रत्यया उच्यन्ते तेषां जातादयोऽर्थविशेषाः समर्थविभक्तयश्च वक्ष्यन्ते ॥

**१०६६. ग्रामाद्यखञौ ४।२।९४॥**

ग्राम्यः । ग्रामीणः ॥

---

प्रत्यय र घकारका स्थानमा "आयनेयीनीयियः०"ले इय्आदेश, विभक्तिलुक् भयो, अकारको लोप भयो, 'राष्ट्रिय'शब्द बन्यो, त्यसदेखि पुंलिङ्गमा सु आयो, 'राष्ट्रियः' सिद्ध भयो । राष्ट्रिय शब्दका विशेष्यअनुसार लिङ्ग वचन हुन्छन् । जस्तै–

| | |
|---|---|
| पुंलिङ्गमा- | राष्ट्रियः पुरुषः (राष्ट्रिय मान्छे) |
| स्त्रीलिङ्गमा- | राष्ट्रिया संस्कृतिः (राष्ट्रिय संस्कृति) |
| नपुंसकलिङ्गमा- | राष्ट्रियम् वनम् (राष्ट्रिय वन) आदि । |

**अवारपारीणः**– अवारपारे भवः (वारि पारि भएको) यस विग्रहमा 'अवारपार+ङि'देखि "राष्ट्रावारपाराद्०"ले ख प्रत्यय, खकारका स्थानमा ईन् आदेश, अकारको लोप भयो, णत्व भयो, 'अवारपारीण'शब्द बन्यो, त्यसदेखि सु आयो, 'अवारपारीणः' सिद्ध भयो ।

यसको प्रयोग– गङ्गाया अवारपारीणो देशः (गङ्गा वारिपारिको देश)

**अवारपारादिति**– पृथक् गरिएको अवारपार शब्द- अर्थात् अवार, पार, यी शब्ददेखि र विपरीत अवारपार शब्द - अर्थात् पारावार शब्ददेखि पनि ख प्रत्यय होस् भन्नू ।

**अवारीणः**– अवारे भवो जातो वा (वारि भएको अथवा जन्मेको) यस विग्रहमा सप्तम्यन्त अवार शब्ददेखि प्रकृतवार्तिकले ख प्रत्यय, ईन् आदेश, अकारलोप, णत्व भएर 'अवारीण' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अवारीणः' सिद्ध भयो ।

**पारीणः**– पारे भवो जातो वा (पारी भएको अथवा जन्मेको) यस विग्रहमा "अवार पाराद्०" यस वार्तिकले सप्तम्यन्त पार शब्ददेखि ख प्रत्यय भयो, खकारका स्थानमा ईन् आदेश भयो, अकारको लोप, णत्व भयो, 'पारीण' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पारीणः' सिद्ध भयो ।

**पारावारीणः**– पारावारे भवो जातो वा (पारि वारि भएको वा जन्मेको) यस विग्रहमा उक्त वार्तिकले 'पारावार+ङि'देखि ख प्रत्यय भएर पूर्ववत् 'पारावारीण' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पारावारीणः' सिद्ध भयो ।

**इहेति**– यहाँ प्रकृति विशेषदेखि- अर्थात् राष्ट्र, अवारपार, ग्राम आदि गरिएका शब्ददेखि घ, ख, यत् आदि गरिएका टचु, टचुल् सम्मका प्रत्यय कहिन्छन् । तिनीहरूको 'जातः' आदि अर्थविशेष र 'तत्र'आदि समर्थविभक्ति पछि बताइने छन् । त्यसैकारण यस प्रकरणका शब्दहरूदेखि मात्र प्रत्यय होस् भनिएको छ । समर्थविभक्ति पछि नै छन् । विग्रहमा पछि बताइने समर्थविभक्ति देखाइएको छ ।

**ग्रामादिति**– ग्रामशब्दप्रकृतिक सुबन्तसमर्थदेखि य प्रत्यय र खञ् प्रत्यय होऊन्, शैषिक अर्थमा ।

**ग्राम्यः, ग्रामीणः**– ग्रामे जातः (गाउँमा जन्मेको) यस विग्रहमा 'ग्राम+ङि'देखि "ग्रामाद्यखञौ"ले य प्रत्यय, विभक्तिलुक् "यस्येति च"ले ग्रामका अकारको लोप भयो, 'ग्राम्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'ग्राम्यः' सिद्ध भयो । उक्त विग्रहमा नै 'ग्राम+ङि'देखि उक्त सूत्रले खञ् प्रत्यय भएको पक्षमा खकारका स्थानमा ईन् आदेश, अकार लोप, णत्व भयो, 'ग्रामीण'शब्द बन्यो, त्यसदेखि सु आयो, 'ग्रामीणः' सिद्ध भयो ।

---

**१०६७. नद्यादिभ्यो ढक् ४।२।९७।।**

नादेयम् । माहेयम् । वाराणसेयम् ॥

**१०६८. दक्षिणापश्चात्पुरसस्त्यक् ४ । २ । ९७ ॥**

दाक्षिणात्यः । पाश्चात्त्यः । पौरस्त्यः ॥

**१०६९. द्युप्रागपागुदक्प्रतीचो यत् ४।२।१०१।।**

दिव्यम् । प्राच्यम् । अपाच्यम् । उदीच्यम् ।

---

**नद्यादिभ्य इति**– नदी आदि शब्दप्रकृतिक सुबन्त समर्थदेखि ढक् प्रत्यय होस् शैषिक अर्थमा ।

**नादेयम्**– नद्यां भवम् (नदीमा भएको) यस विग्रहमा 'नदी+ङि'देखि "नद्यादिभ्यो०"ले ढक् प्रत्यय, ढकारका स्थानमा एय् आदेश, विभक्तिलुक्, आदिवृद्धि, नदीका ईकारको लोप भयो, 'नादेय'शब्द बन्यो, त्यसदेखि सु आयो, 'नादेयम्' सिद्ध भयो ।

**माहेयम्**– मह्यां भवम् (पृथ्वीमा भएको) यस विग्रहमा पूर्ववत् 'मही+ङि'देखि प्रकृतसूत्रले ढक् प्रत्यय भयो, पूर्ववत् सबै प्रक्रिया भयो, 'माहेय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'माहेयम्' सिद्ध भयो ।

**वाराणसेयम्**– वाराणस्यां भवम् (वाराणसीमा भएको) यस विग्रहमा 'वाराणसी+ङि' देखि प्रकृतसूत्रले ढक् प्रत्यय भयो, पूर्ववत् सबै प्रक्रिया भयो, 'वाराणसेय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'वाराणसेयम्' सिद्ध भयो ।

**दक्षिणापश्चादिति**– दक्षिणा, पश्चात् र पुरस् शब्ददेखि त्यक् प्रत्यय होस्, शैषिक अर्थमा ।

**दाक्षिणात्यः**– दक्षिणा भवः (दक्षिण दिशामा भएको) यस अर्थमा दक्षिणा यो अव्यय शब्ददेखि "दक्षिणापश्चात्०"ले त्यक् प्रत्यय भयो, "किति च"ले आदिवृद्धि भयो, 'दाक्षिणात्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'दाक्षिणात्यः' सिद्ध भयो ।

**पाश्चात्त्यः**– पश्चात् भव (पश्चिमदिशामा भएको) यस विग्रहमा पश्चात् यो अव्यय शब्ददेखि प्रकृतसूत्रले त्यक् प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भएर 'पाश्चात्त्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पाश्चात्त्यः' सिद्ध भयो ।

**पौरस्त्यः**– पुरो भवः (पूर्वतर्फ भएको अथवा पहिले भएको) यस विग्रहमा पुरस् शब्ददेखि प्रकृतसूत्रले त्यक् प्रत्यय र पूर्ववत् सबै प्रक्रिया भयो, 'पौरस्त्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पौरस्त्यः' सिद्ध भयो । दक्षिणा आदि शब्द अव्यय हुनाले यहाँ विभक्ति राखिएन ।

**द्युप्रागिति**– दिव्, प्राक्, उदक्, यी शब्दप्रकृतिक, सुबन्तसमर्थदेखि यत् प्रत्यय होस्, शैषिक अर्थमा ।

**दिव्यम्**– दिवि भवम् (स्वर्गमा हुने) यस विग्रहमा 'दिव्+ङि'देखि "द्युप्रागुदक्०"ले यत्प्रत्यय, विभक्तिलुक् भयो, 'दिव्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'दिव्यम्' सिद्ध भयो ।

**प्राच्यम्**– प्राचि भवम् (पूर्वदिशामा भएको) यस विग्रहमा 'प्र+अञ्च्+ङि'देखि "द्युप्रागुदक्०"ले यत्प्रत्यय, विभक्तिलुक्, भसंज्ञा, नकारको लोप, अकारको लोप, प्रका अकारका स्थानमा "चौ" ले दीर्घ भयो, 'प्राच्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'प्राच्यम्' सिद्ध भयो ।

**अपाच्यम्**– अपाचि भवम् (दक्षिण दिशामा भएको) यस विग्रहमा 'अप+अञ्च्+ङि'देखि प्रकृतसूत्रले यत् प्रत्यय, विभक्तिलुक्, भसंज्ञा, नकारको लोप, अकारको लोप, दीर्घ भयो, 'अपाच्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अपाच्यम्' सिद्ध भयो ।

**उदीच्यम्**– उदीचि भवम् (उत्तरदिशामा भएको) यस विग्रहमा 'उद+अञ्च्+ङि'देखि "द्युप्रागुदक्०"ले यत् प्रत्यय, विभक्तिलुक्, भसंज्ञा, नकारको लोप, "उद ईत्"ले अकारको स्थानमा

प्रतीच्यम् ॥

**१०७०. अव्ययात्त्यप् ४।२।१०४॥**

**वा**.(अमेहक्वतसित्रेभ्य एव) । अमात्यः । इहत्यः । क्वत्यः । ततस्त्यः । तत्रत्यः ।
**वा**. (त्यब्नेर्ध्रुव इति वक्तव्यम्) । नित्यः ॥

**१०७१. वृद्धिर्यस्याचामादिस्तद्वृद्धम् १।१।७३॥**

यस्य समुदायस्याचां मध्ये आदिर्वृद्धिस्तद्वृद्धसंज्ञं स्यात् ॥

**१०७२. त्यदादीनि च १।१।७४॥**

वृद्धसंज्ञानि स्युः ॥

**१०७३. वृद्धाच्छः ४।२।११४॥**

शालीयः ।

---

ईकार भयो, 'उदीच्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'उदीच्यम्' सिद्ध भयो ।

**प्रतीच्यम्**- प्रतीचि भवम् (पश्चिम दिशामा भएको) यस विग्रहमा 'प्रति+अञ्च्+ङि'देखि प्रकृतसूत्रले यत् प्रत्यय, विभक्तिलुक्, भसंज्ञा, नकारको लोप, "चौ"ले प्रतिका इकारका स्थानमा दीर्घ ईकार भयो, 'प्रतीच्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'प्रतीच्यम्' सिद्ध भयो ।

**अव्ययादिति**- अव्ययसंज्ञक शब्ददेखि त्यप् प्रत्यय होस्, शैषिक अर्थमा ।

**(वा.) अमेहेति**- अमा शब्द, इह शब्द, क्व शब्द र तसिल्, त्रल्, यी प्रत्यय अन्तमा हुने शब्ददेखि मात्र त्यप् प्रत्यय होस् ।

**अमात्यः(मन्त्री)**- अमा भवः (सँगै हुने) यस विग्रहमा अमा शब्ददेखि "अव्ययात्त्यप्"ले त्यप् प्रत्यय पाएकोमा "अमेहक्वतसित्रेभ्य एव" यो वार्तिकले नियम गर्‍यो, यहाँ अमा शब्द नै छ र त्यप् प्रत्यय भयो, पकारको अनुबन्धलोप भयो, 'अमात्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अमात्यः' सिद्ध भयो । यस्तै प्रकारले इह भवः (यहाँ भएको) यस विग्रहमा 'इहत्यः',क्व भवः (कहाँ भएको यस विग्रहमा 'क्वत्य' ततो भवः (त्यहाँ भएको) यस विग्रहमा 'ततस्त्यः', तत्र भवः (त्यहाँ भएको) यस विग्रहमा 'तत्रत्यः' यी रूपहरू क्रमशः इह शब्द, क्व शब्द, तसिल् प्रत्यान्त ततस् शब्द, त्रल् प्रत्ययान्त तत्र शब्ददेखि प्रकृत वार्तिकले त्यप् प्रत्यय भएर पूर्ववत् बन्दछन् । प्रयोग-

राज्ञ अमात्यः (राजाको मन्त्री) क्वत्योऽयम् (यो कहाँको हो ?)
ततस्त्योऽयम् (यो त्यहींको हो) तत्रत्योऽयम् (यो त्यहींको हो)

**(वा) त्यब्नेरिति**- निशब्ददेखि ध्रुव अर्थमा त्यप् प्रत्यय होस् ।

**नित्यः**- ध्रुवः (स्थिर) यो अर्थमा निशब्ददेखि त्यप् प्रत्यय भयो, 'नित्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'नित्यः' सिद्ध भयो ।

**वृद्धिर्यस्येति**- जुन समुदायको अच्हरूका मध्येमा आदिअच्, वृद्धिसंज्ञक छ, त्यो समुदाय वृद्धसंज्ञक होस् ।

**त्यदादीनि चेति**- त्यदादि गणपठित शब्द पनि वृद्धसंज्ञक होऊन् ।

**वृद्धादिति**- वृद्धसंज्ञक शब्दप्रकृतिक सुबन्तसमर्थदेखि छ प्रत्यय होस् शैषिक अर्थमा ।

**शालीयः**- शाला शब्दलाई "वृद्धिर्यस्याचामादिः०"ले वृद्धसंज्ञा भएपछि शालायां जातः (घरमा जन्मेको) यस विग्रहमा 'शाला+ङि'देखि "वृद्धाच्छः"ले छ प्रत्यय भयो, छकारका स्थानमा ईय् भयो, विभक्तिलुक् भयो, 'शाला+ईय', यहाँ शालाका आकारको लोप भयो, 'शालीय' शब्द

---

मालीयः । तदीयः । वा.(वा नामधेयस्य वृद्धसंज्ञा वक्तव्या) । देवदत्तीयः, दैवदत्तः ॥

**१०७४. गहादिभ्यश्च ४।२।१३८॥**

गहीयः ॥

**१०७५. युष्मदस्मदोरन्यतरस्यां खञ् च ४।३।१॥**

चाच्छः । पक्षेऽण् । युवयोर्युष्माकं वायं युष्मदीयः, अस्मदीयः ॥

---

बन्यो, त्यसदेखि सु आयो, 'शालीयः' सिद्ध भयो ।

**मालीयः**- माला शब्दलाई "वृद्धिर्यस्याचामादिः०"ले वृद्धसंज्ञा भएपछि मालायां भवः (मालामा भएको) यस विग्रहमा 'माला+ङि'देखि "वृद्धाच्छः"ले छप्रत्यय भयो, छका स्थानमा ईय् आदेश भयो, विभक्तिको लुक्, आदि पूर्ववत् प्रक्रिया भयो, 'मालीय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'मालीयः' सिद्ध भयो ।

**तदीयः**- तत् शब्दलाई "त्यदादीनि च"ले वृद्धसंज्ञा भएपछि तस्य अयम् (त्यसको यो) यस विग्रहमा 'तद्+ङस्'देखि "वृद्धाच्छः"ले छप्रत्यय भयो, छकारका स्थानमा ईय् आदेश भयो, 'तदीय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'तदीयः' सिद्ध भयो ।

**(वा.) वेति**- नामवाचक शब्दको विकल्पले वृद्धसंज्ञा होस् भन्नू ।

**देवदत्तीय, दैवदत्तः**- देवदत्त शब्दलाई "वा नामधेयस्य०"ले वृद्धसंज्ञा भएपछि, देवत्तस्यायम् (देवदत्तको यो) यस विग्रहमा 'देवदत्त+ङस्'देखि "वृद्धाच्छः"ले छ प्रत्यय भयो, छका स्थानमा ईय् आदेश, विभक्तिलुक्, अकारको लोप भयो, 'देवत्तीय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'देवत्तीयः' सिद्ध भयो । वृद्धसंज्ञा नभएको पक्षमा प्राग्दीव्यतीय अण् प्रत्यय भयो, विभक्तिलुक्, आदिवृद्धि, अकारको लोप भयो, 'दैवदत्त' शब्द बन्यो, त्यसदेखि सु आयो, 'दैवदत्तः' सिद्ध भयो ।

**गहादिभ्यश्चेति**- गहादिगण पठित शब्ददेखि पनि छ प्रत्यय होस् शैषिक अर्थमा ।

**गहीयः**- गहे जातः (गह देशमा जन्मेको) यस अर्थमा 'गह+ङि'देखि "गहादिभ्यश्च"ले छ प्रत्यय भयो, छकारका स्थानमा ईय् भयो, पूर्ववत् सबै प्रक्रिया भयो, 'गहीयः' सिद्ध भयो ।

**युष्मदस्मदोरिति**- युष्मद् अस्मद् शब्ददेखि विकल्पले खञ् प्रत्यय होस् एकपक्षमा अण् प्रत्यय पनि होस्, शैषिक अर्थमा ।

"त्यदादीनि च"ले युष्मद् अस्मद् शब्लाई वृद्धसंज्ञा हुने हुनाले "वृद्धाच्छः"ले छ प्रत्यय मात्र पाएको थियो, यस सूत्रले छ प्रत्यय, खञ् प्रत्यय र अण् प्रत्यय पनि विधान गर्दछ । त्यसमध्ये छ प्रत्यय भएको रूप यहाँ पहिले दिएको छ ।

**युष्मदीयः**- युष्मद् शब्दलाई "त्यदादीनि च"ले वृद्धसंज्ञा भएपछि युवयो र्युष्माकं वाऽयम् (तपाई दुईको वा तपाईहरूको यो) यस विग्रहमा 'युष्मद्+ओस्' र 'युष्मद्+आम्'देखि "वृद्धाच्छः"लाई बाधेर "युष्मदस्मदोः०"ले वैकल्पिक छ प्रत्यय, छकारका स्थानमा ईय् आदेश भयो, विभक्तिलुक् भयो, 'युष्मदीय'शब्द बन्यो, त्यसदेखि सु आयो, 'युष्मदीयः' सिद्ध भयो । सप्तमीको द्विवचन ओस् र बहुवचन आम् राखेर गरिएको दुवै विग्रहको यौटै रूप 'युष्मदीयः' भयो ।

**अस्मदीयः**- अस्मद् शब्दलाई "त्यदादीनि च"ले वृद्धसंज्ञा भएपछि, आवयोरस्माकं वा अयम् (हामीदुईको वा हामीहरूको यो) यस विग्रहमा पनि 'अस्मद्+ओस्' र 'अस्मद्+आम्'देखि छ प्रत्यय, छकारका स्थानमा ईय् आदेश भयो, 'अस्मदीय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अस्मदीयः' सिद्ध भयो । 'तव मम वा अयम्' यस्तो विग्रह राख्दा भने अर्कै रूप हुन्छ । अतः यहाँ युष्मद्, अस्मद् शब्दमा दुईवचन र बहुवचन राखेर विग्रह गरिएको हो । खञ् प्रत्यय र अण् प्रत्ययमा

**१०७६. तस्मिन्नणि च युष्माकास्माकौ ४।३।२॥**

युष्मदस्मदोरेतावादेशौ स्तः खञ्यणि च । यौष्माकीणः । आस्माकीनः । यौष्माकः । आस्माकः ॥

**१०७७. तवकममकावेकवचने ४।३।३॥**

एकार्थवाचिनोर्युष्मदस्मदोस्तवकममकौ स्तः खञि अणि च । तावकीनः । तावकः । मामकीनः । मामकः । छेतु–

**१०७८. प्रत्ययोत्तरपदयोश्च ७।२।९८॥**

मपर्यन्तयोरेतयोरेकार्थवाचिनोस्त्वमौ स्तः प्रत्यये उत्तरपदे च परतः ।

---

विशेषप्रक्रिया हुने हुनाले पहिले छ प्रत्ययको प्रक्रिया देखाइएको हो ।

**तस्मिन्नणि चेति**– युष्मद्, अस्मद् शब्दका स्थानमा युष्माक र अस्माक आदेश होऊन् खञ्प्रत्यय र अण्प्रत्यय पर भएमा ।

**यौष्माकीणः**– युष्मद् शब्दलाई "त्यदादीनि च"ले वृद्धसंज्ञा भएपछि, युवयोर्युष्माकं वा अयम् (तिमीदुई वा तिमीहरूको यो) यस विग्रहमा "युष्मदस्मदोः०"ले खञ् प्रत्यय भयो, "तस्मिन्नणि च०"ले युष्मद् शब्दका स्थानमा युष्माक आदेश भयो, खकारको स्थानमा ईन् आदेश भयो, 'युष्माक+ईन'भयो, आदिवृद्धि, अन्त्य अकारको लोप, नकारको णत्व भयो, 'यौष्माकीण' शब्द बन्यो, त्यसदेखि सु आयो, 'यौष्माकीणः' सिद्ध भयो ।

**आस्माकीनः**– आवयोरस्माकं वा अयम् (हामीदुई वा हामीहरूको यो) यस विग्रहमा 'अस्मद्+ओस्' र 'अस्मद्+आम्'देखि पूर्वसूत्रले खञ् प्रत्यय भयो, खकारका स्थानमा ईन् आदेश, विभक्तिलुक् भयो, 'अस्माक+ईन'भयो, आदिवृद्धि, अन्त्य अकारको लोप भयो, 'आस्माकीन' शब्द बन्यो, त्यसदेखि सु आयो, 'आस्माकीनः' सिद्ध भयो ।

**यौष्माकः, आस्माकः**– पूर्वोक्त विग्रहमा खञ् प्रत्यय र छ प्रत्यय नभएको पक्षमा अण् प्रत्यय भयो, 'युष्मद्, अष्मद् शब्दका स्थानमा युष्माक, अस्माक आदेश, आदिवृद्धि आदि सबै प्रक्रिया भएर 'यौष्माक', 'आस्माक', यी दुई शब्द बने, सु आयो, 'यौष्माकः', 'आस्माकः' यी दुई रूप सिद्ध भए ।

**तवकममकाविति**– एकत्वसङ्ख्याविशिष्टरूप अर्थ बुझाउने युष्मद् शब्द र अस्मद् शब्दका स्थानमा तवक र ममक आदेश होऊन् । खञ् प्रत्यय र अण् प्रत्यय पर भएमा ।

**तावकीनः, तावकः**– तव अयम् (तिम्रो यो) यस विग्रहमा 'युष्मद्+ङस्'देखि "युष्मदस्मदोः०"ले खञ् प्रत्यय र एक पक्षमा अण् प्रत्यय भयो, "तस्मिन्नणि च०"ले उभय पक्षमा युष्माक आदेश पाएकोमा बाधेर "तवकममकावेकचने"ले उभयपक्षमा नै तवकआदेश भयो, खकारका स्थानमा ईन् आदेश भएपछि, उभयत्र, आदिवृद्धि, अन्त्य अकारको लोप भयो, 'तावकीन' 'तावक' यी दुई शब्द बने, सु आयो, 'तावकीनः', 'तावकः' यी दुई रूप सिद्ध भए ।

**मामकीनः, मामकः**– मम अयम् (मेरो यो) यस विग्रहमा 'अस्मद्+ङस्'देखि "युष्मदस्मदोः०"ले खञ् अण् भएपछि पूर्ववत् "तस्मिन्नणि०"लाई बाधेर "तवकममकावेकचने"ले ममक आदेश भयो, खञ्का खकारका स्थानमा ईन् आदेश उभयपक्षमा आदिवृद्धि र अकारको लोप भयो, 'मामकीन', 'मामक' यी शब्द बने, सु आयो, 'मामकीनः', 'मामकः' यी दुई रूप सिद्ध भए । छप्रत्यय पर भएमा त निम्न लिखित सूत्रको प्रवृत्ति हुन्छ ।

**प्रत्ययेति**– एकार्थवाचक युष्मद्,अस्मद् शब्दका मपर्यन्त भागका स्थानमा त्व र म आदेश होऊन् प्रत्यय पर भएमा र उत्तरपद भएमा पनि ।

---

त्वदीयः । मदीयः । त्वत्पुत्रः । मत्पुत्रः ॥

**१०७९. मध्यान्मः ४।३।८॥**

मध्यमः ॥

**१०८०. कालाट्ठञ् ४।३।११॥**

कालवाचिभ्यष्ठञ् स्यात् । कालिकम् । मासिकम् । सांवत्सरिकम् । **वा.**(अव्ययानां भमात्रे टिलोपः) ।

---

**त्वदीयः**– तव अयम् (तिम्रो यो) यस विग्रहमा 'युष्मद्+ङस्'देखि "युष्मदस्मदोः०"ले एक पक्षमा छप्रत्यय भयो, युष्मद् शब्दका मपर्यन्त भागका स्थानमा "प्रत्ययोत्तरपदयोश्च"ले त्व आदेश भयो, छका स्थानमा ईय भयो, 'त्व+अद्+ईय', पररूप, वर्णमेलन भयो, 'त्वदीय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'त्वदीयः' सिद्ध भयो ।

**मदीयः**– मम अयम् (मेरो यो) यस विग्रहमा 'अस्मद्+ङस्'देखि पूर्ववत् छ प्रत्यय, मपर्यन्त भागका स्थानमा म आदेश आदि सबै प्रक्रिया भयो, 'मदीय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'मदीयः' सिद्ध भयो ।

**त्वत्पुत्रः**– तव पुत्रः (तिम्रो छोरा) यस विग्रहमा 'युष्मद्+ङस्+पुत्र+सु' यहाँ षष्ठी समास विभक्तिलुक् भएपछि उक्त उत्तरपद पर हुनाले "प्रत्ययोत्तर०"ले युष्मद्शब्दका मपर्यन्त भागका स्थानमा त्वआदेश पररूप, चर्त्व भयो, 'त्वत्पुत्र' शब्द भयो, त्यसदेखि सु आयो, 'त्वत्पुत्रः' सिद्ध भयो ।

**मत्पुत्रः**– मम पुत्रः (मेरो छोरा) यस विग्रहमा 'अस्मद्+ङस्+पुत्र+सु' यहाँ षष्ठीसमास विभक्तिलुक् उक्त सूत्रले म आदेश आदि प्रक्रिया पूर्ववत् भयो, 'मत्पुत्र' शब्द बन्यो, त्यसदेखि सु आयो, 'मत्पुत्रः' सिद्ध भयो ।

**मध्यादिति**– मध्य शब्ददेखि म प्रत्यय होस् शैषिक अर्थमा ।

**मध्यमः**– मध्ये भवः (माझमा भएको) यस विग्रहमा 'मध्य+ङि'देखि "मध्यान्मः"ले म प्रत्यय, विभक्तिलुक् भयो, 'मध्यम' शब्द बन्यो, त्यसदेखि सु आयो, 'मध्यमः' सिद्ध भयो ।

**कालादिति**– कालवाचक शब्ददेखि ठञ् प्रत्यय होस् शैषिक अर्थमा । यो सूत्रले काल शब्द र कालवाचक शब्द दुवै देखि ठञ् प्रत्यय हुन्छ ।

कालिकम्– काले भवम् (समयमा भएको) यस विग्रहमा 'काल+ङि'देखि "कालाट्ठञ्"ले ठञ्प्रत्यय भयो, ठकारका स्थानमा इक, आदिवृद्धि, अकारलोप भयो, 'कालिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'कालिकम्' सिद्ध भयो ।

मासिकम्– मासे भवम् (महीनामा भएको) यस विग्रहमा 'मास+ङि'देखि "कालाट्ठञ्"ले ठञ् प्रत्यय भयो, ठका स्थानमा इक आदेश भयो, विभक्तिलुक्, आदिवृद्धि, अलोप भयो, 'मासिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'मासिकम्' सिद्ध भयो ।

**सांवत्सरिकम्**– संवत्सरे क्रियते (वर्षदिनमा गरिन्छ) यस विग्रहमा 'संवत्सर+ङि'देखि उक्तसूत्रले ठक् र पूर्ववत् सबै प्रक्रिया भयो, 'सांवत्सरिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'सांवत्सरिकम्' सिद्ध भयो । यसको प्रयोग- 'सांवत्सरिकमेकोद्दिष्टं श्राद्धम्' (वर्षदिनमा गरिने एकोद्दिष्ट श्राद्ध)

**(वा) अव्ययानामिति**– अव्ययहरूको भसंज्ञा मात्र भएमा टिलोप होस् । यो वार्तिक "टेः" यो सूत्रको हो । "टेः"ले डित् प्रत्यय पर भएमा टिलोप हुन्छ, अव्ययको डित् प्रत्यय पर नभएपनि भसंज्ञा मात्र भएमा टिको लोप हुन्छ भन्ने स वार्तिकको आशय हो ।

---

सायम्प्रातिकः । पौनःपुनिकः ॥

**१०८१. प्रावृष एण्यः ४।३।१७॥**

प्रावृषेण्यः ॥

**१०८२. सायञ्चिरम्प्राह्वेप्रगेऽव्ययेभ्यष्टयुटयुलौ तुट् च ४।३।२३॥**

सायमित्यादिभ्यश्चतुर्भ्योऽव्ययेभ्यश्च कालवाचिभ्यष्टयुटयुलौ स्तस्तयोस्तुट् च । प्राह्णप्रगयोरेदन्तत्वं च निपात्यते । सायन्तनम् । चिरन्तनम् । प्राह्णेतनम् । प्रगेतनम् ।

---

**सायंप्रातिकः**– सायं प्रातर्भवति (साँझ बिहान हुन्छ) यस अर्थमा सायंप्रातर् शब्ददेखि "कालाट्ठञ्"ले ठञ् प्रत्यय भयो, ठकारका स्थानमा इक आदेश भएपछि, भसंज्ञा भयो, "अव्ययानां भमात्रे०"ले टिलोप भयो, 'सायंप्रातिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'सायंप्रातिकः' सिद्ध भयो । यसको प्रयोग- सायंप्रातिकः पूजाविधिः (साँझ बिहान हुने पूजा विधि ।

**पौनःपुनिकः**– पुनः पुनः भवति (बारम्बार हुन्छ) यस विग्रहमा "कालाट्ठञ्"ले ठञ् प्रत्यय भयो, ठका स्थानमा इक, आदिवृद्धि, टिलोप आदि सबै प्रक्रिया भयो, 'पौनःपुनिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पौनःपुनिकः' सिद्ध भयो ।

यसको प्रयोग- सतां पौनःपुनिकः समागमो दुरितं विनाशयति (सज्जनहरू सँग बारम्बार हुने भेटघाटले पाप नाश गर्दछ) ।

**प्रावृष इति**– प्रावृष शब्ददेखि एण्य प्रत्यय होस्, शैषिक अर्थमा ।

**प्रावृषेण्यः**– प्रावृषि भवः (वर्षामा हुने) यस विग्रहमा 'प्रावृष्+ङि'देखि "कालाट्ठञ्"लाई बाधेर "प्रावृष एण्यः"ले एण्य प्रत्यय भयो, विभक्तिलुक् भयो, 'प्रावृषेण्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'प्रावृषेण्यः' सिद्ध भयो । यसको प्रयोग- प्रावृषेण्यो बलाहकः (वर्षाकालिक बादल) ।

**सायमिति**– सायं चिरम् प्राह्वे प्रगे यी शब्ददेखि र कालवाचक अव्ययदेखि ट्यु र ट्युल्प्रत्यय होऊन्, तुट्आगम पनि होस् । टयु र टयुल् प्रत्ययमा टकार र लकारको अनुबन्धलोप हुन्छ । युका स्थानमा अन् आदेश हुन्छ । तुट् आगमको उट् यो अनुबन्धलोप हुन्छ ।

**प्राह्णप्रगयोरिति**– प्राह्ण शब्द र प्रग शब्दको एकारान्तत्व निपातन गरिन्छ । (साय शब्द र चिर शब्द निपातनात् मकारान्त बन्दछन् । साय शब्द घञ् प्रत्ययान्त हो ।)

**सायन्तनम्**– साये भवम् (सायम् कालमा भएको) यस विग्रहमा 'साय+ङि'देखि "सायम् चिरम्प्राह्णे०"ले टयु प्रत्यय र टयुल् प्रत्यय भयो । टकार र लकारको अनुबन्ध लोप भएपछि उभयत्र यु बाँकी रह्यो, युका स्थानमा "युवोरनाकौ"ले अन आदेश भयो, यही सूत्रले तुट् आगम पनि भयो निपातनात् साय शब्दको अन्तमा मकार भयो, अनुस्वार परसवर्ण हुँदा सायन्तन शब्द बन्यो त्यसदेखि सु आयो अम् भयो, सायन्तनम् सिद्ध भयो । विशेष्य अनुसार लिङ्ग हुँदा– सायन्तनों विधिः । सायन्तनी सन्ध्या । सायन्तनं कर्म इत्यादि प्रयोग हुन्छ ।

**चिरन्तनम्**– चिरे भवः (धेरै कालमा भएको) यस विग्रहमा 'चिर+ङि'देखि पूर्व सूत्रले टयु प्रत्यय र टयुल् प्रत्यय भएपछि पूर्ववत् प्रक्रिया भयो र चिर शब्दको मकारान्तत्व निपातन भयो, चिरन्तन शब्द बन्यो, त्यसदेखि सु आयो चिरन्तनम् सिद्ध भयो ।

**प्राह्णेतनम्**– प्राह्णे भवम् (पूर्वाह्णमा भएको) यस विग्रहमा 'प्राह्ण+ङि' देखि उक्त सूत्रले टयु प्रत्यय र टयुल् प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भयो, प्राह्ण शब्दको एकारान्तत्व निपातन भयो, 'प्राह्णेतन'शब्द बन्यो त्यसदेखि सु आयो- 'प्राह्णेतनम्' सिद्ध भयो ।

**प्रगेतनम्**– प्रगे भवः (बिहान भएको) यस विग्रहमा 'प्रग+ङि'देखि पूर्ववत् टयु प्रत्यय र

दोषातनम् ॥

**१०८३. तत्र जातः ४।३।२५॥**

सप्तमीसमर्थाज्जात इत्यर्थेऽणादयो घादयश्च स्युः। स्रुग्घ्ने जातः स्रौग्घ्नः। उत्से जात औत्सः। राष्ट्रे जातो राष्ट्रियः। अवारपारे जातः–अवारपारीणः, इत्यादि ॥

**१०८४. प्रावृषष्ठप् ४।३।२६॥**

एण्यापवादः। प्रावृषिकः ॥

---

टचुल् प्रत्यय भएर 'प्रगेतन'शब्द बन्दछ र त्यसदेखि सु आएर 'प्रगेतनम्' सिद्ध हुन्छ। यहाँ टचु प्रत्यय र टचुल् प्रत्यय दुवै प्रत्ययमा रूप यौटै हुन्छन्, तर टचुल् प्रत्ययमा लित्त्व हुनाले "लित् स्वरितम्"ले स्वरित हुने हुँदा स्वरमा फरक छ।

**दोषातनम्**– दोषा भवम् (रातमा भएको) यस विग्रहमा "सायं चिरम्प्राह्णे०" यस सूत्रले कालवाचक अव्यय दोषा शब्ददेखि पूर्ववत् टचु प्रत्यय, टचुल् प्रत्यय र तुट आगम आदि प्रक्रिया भयो, 'दोषातन'शब्द बन्यो त्यसदेखि सु आयो 'दोषातनम्'सिद्ध भयो, यस्तै प्रकारले अद्यतनम्, श्वस्तनम्, ह्यस्तनम् इत्यादिरूप पनि सिद्ध हुन्छन्।

**तत्रेति**– सप्तम्यन्तसमर्थदेखि 'जातः' यस अर्थमा अण् आदि प्रत्यय र घ आदि प्रत्यय होऊन्।

**स्रौघ्नः**:– स्रुघ्ने भवः (स्रुघ्न देशमा भएको) यस अर्थमा 'स्रुघ्न+ङि' यसदेखि अण् प्रत्यय भयो, आदिवृद्धि अकारको लोप भयो स्रौघ्न शब्द बन्यो त्यसदेखि सु आयो 'स्रौघ्नः' सिद्ध भयो।

**औत्सः**:– उत्से जातः (खोल्सामा जन्मेको) यस अर्थमा 'उत्स+ङि' देखि "उत्सादिभ्योऽञ्"र "तत्र जातः" को एकवाक्यता[१४७] भएर अञ् प्रत्यय भयो, आदिवृद्धि, अकारको लोप भयो, 'औत्स'शब्द बन्यो त्यसदेखि सु आयो, 'औत्सः' सिद्ध भयो।

**राष्ट्रियः**:– राष्ट्रे जातः (राष्ट्रमा जन्मेको) यस विग्रहमा 'राष्ट्र+ङि'देखि "तत्र जातः" को अर्थमा "राष्ट्रावारपाराद् घखौ"ले घ प्रत्यय भयो पूर्ववत् प्रक्रिया भएर 'राष्ट्रिय'शब्द बन्यो, त्यसदेखि सु आयो 'राष्ट्रियः' सिद्ध भयो।

**आवारपारीणः**:– अवारपारे जातः (वारिपारि जन्मेको) यस अर्थमा "तत्र जातः" यो सूत्रको अर्थमा "राष्ट्रावारपाराद् घखौ"ले ख प्रत्यय भयो पूर्ववत् सबै प्रक्रिया भयो 'अवारपारीण' शब्द बन्यो, त्यसदेखि सु आयो 'आवारपारीणः' सिद्ध भयो। राष्ट्रिय आवारपारीण यी दुई रूप अघिनै पनि साधिएका छन्।

**प्रावृष इति**– प्रावृषशब्दप्रकृतिक सप्तम्यन्त समर्थदेखि ठप् प्रत्यय होस् 'जातः' यस अर्थमा।

**प्रावृषिकः**:– प्रावृषि जातः (वर्षामा जन्मेको) यस विग्रहमा 'प्रावृष्+ङि'देखि "प्रावृष एण्यः"लाई बाधेर "प्रावृषष्ठप"ले ठप् प्रत्यय भयो। ठकारका इक आदेश भयो। विभक्ति लुक् भयो, प्रावृषिक शब्द बन्यो, त्यसदेखि सु आयो 'प्रावृषिकः' सिद्ध भयो।

---

१४७ "शेषे" यो सूत्रमा "अपत्यादि विकारान्त अर्थमा हुने सामान्य अण् प्रत्यय र त्यसका अपवाद प्रत्यय ण्य, नञ, स्नञ्, आदिको समेत अधिकार आउँछ। "शेषे" बाट त्यो अधिकार तत्रजातः तत्रभवः आदि शैषिक प्रकरणका सबै सूत्रमा जान्छ। अतः अपत्यादि विकारान्त अर्थमा प्रत्यय गर्ने सामान्य सूत्र "प्राग्दीव्यतोऽण्" र त्यसका अपवाद सूत्र "दित्यदित्यादित्य०","उत्सादिभ्योऽञ्" आदिको "शेषे" "तत्र जातः" आदि शैषिक प्रकरणका सूत्रसँग एकवाक्यता हुन्छ भन्ने कुरा स्मरण गर्नुपर्छ। 'औत्सः' यहाँ 'उत्से जातः'यो विग्रहमा प्रत्यय गर्दा "उत्सादिभ्योऽञ्"सँग "तत्र जातः"को एकवाक्यता हुन्छ।

१०८५. **प्रायभवः** ४।३।३९॥

तत्रेत्येव । स्रुग्घ्ने प्रायेण बाहुल्येन भवति स्रौग्घ्नः ॥

१०८६. **सम्भूते** ४।३।४२॥

स्रुग्घ्ने सम्भवति स्रौग्घ्नः ॥

१०८७. **कोशाड्ढञ्** ४।३।५३॥

कौशेयं वस्त्रम् ।

१०८८. **तत्र भवः** ४।३।५३॥

स्रुग्घ्ने भवः स्रौग्घ्नः । औत्सः । राष्ट्रियः ॥

१०८९. **दिगादिभ्यो यत्** ४।३।५४॥

दिश्यम् ।

---

**प्रायभव इति**– सप्तम्यन्तसमर्थदेखि 'प्रायभवः' (धेरैजसो हुने) यस अर्थमा अण् आदि प्रत्यय र घ आदि प्रत्यय होऊन् ।

**स्रौघ्नः**– स्रुघ्ने प्रायेण बाहुल्येन भवति (स्रुघ्न देशमा धेरैजसो हुने) यस विग्रहमा 'स्रुघ्न+ङि'देखि "प्रायभवः"ले अण् प्रत्यय भयो, विभक्तिलुक्, आदिवृद्धि, अकारलोप भयो, 'स्रौघ्न'शब्द बन्यो, त्यसदेखि सु आयो, 'स्रौघ्नः' सिद्ध भयो ।

**संभूत इति**– सप्तम्यन्तसमर्थदेखि सम्भूत अर्थात् सम्भावना अर्थमा अण्आदि प्रत्यय र घआदि प्रत्यय होऊन् ।

**स्रौघ्न इति**– स्रुघ्ने संभूतः (सुध्न देशमा सम्भव भएको) यस विग्रहमा 'स्रुध्न+ङि' देखि "सम्भूते"ले अण् प्रत्यय भएर पूर्ववत् 'स्रौघ्न'शब्द बन्यो, सु आयो, 'स्रौघ्नः' सिद्ध भयो ।

**कोशादिति**– कोशशब्दप्रकृतिक सप्तम्यन्तसमर्थदेखि संभूत अर्थमा ढञ् प्रत्यय होस् ।

**कौशेयम्(रेशम आदि)**– कोशे संभूतम् (कोशमा संभव हुने) यस विग्रहमा 'कोश+ङि' देखि "सम्भूते"ले पाएको अण् लाई बाधेर "कोशाड्ढञ्"ले ढञ् प्रत्यय भयो, ढकारका स्थानमा एय् आदेश भयो, आदिवृद्धि, अकारलोप भयो, 'कौशेय'शब्द बन्यो, त्यसदेखि सु आयो, 'कौशेयम्' सिद्ध भयो ।

**तत्रेति**– सप्तम्यन्तसमर्थदेखि भवः (भएको) यस अर्थमा अण् आदि प्रत्यय र घ आदिप्रत्यय होऊन् ।

**स्रौघ्नः**– स्रुघ्ने भवः (स्रुघ्न देशमा भएको) यस अर्थमा 'स्रुघ्न+ङि'देखि अण्प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भयो, 'स्रौघ्न' शब्द बन्यो, त्यसदेखि सु आयो, 'स्रौघ्नः' सिद्ध भयो ।

**औत्सः**- उत्से भवः (खोल्सामा भएको) यस विग्रहमा "उत्सादिभ्यो०"ले अञ्प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भयो, 'औत्स' शब्द बन्यो, त्यसदेखि सु आयो, 'औत्सः' सिद्ध भयो ।

**राष्ट्रियः**– राष्ट्रे भवः (राष्ट्रमा भएको) यस विग्रहमा "राष्ट्रावारपाराद् घखौ" यो सूत्रले घप्रत्यय भयो, घका स्थानमा इय् आदेश भयो, पूर्ववत् 'राष्ट्रिय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'राष्ट्रियः' सिद्ध भयो । औत्सः, राष्ट्रियः, आदि रूप माथि नै पनि साधिएका छन् ।

**दिगादिभ्य इति**– दिश्,आदिशब्दप्रकृतिक सप्तम्यन्त समर्थदेखि 'भवः' यस अर्थमा यत् प्रत्यय होस् ।

**दिश्यम्**– दिशि भवम् (दिशामा हुने) यस अर्थमा 'दिश्+ङि'देखि "दिगादिभ्यो०"ले यत् प्रत्यय भयो, 'दिश्य' शब्द बन्यो, त्यसदेखि सु आयो, अम् भयो, 'दिश्यम्' सिद्ध भयो । दिशोर्भवम्, दिक्षु भवम्, यस विग्रहमा पनि 'दिश्यम्' यही रूप हुन्छ । त्यस्तै अन्यत्र पनि सप्तम्यन्त भनेमा सप्तमीको द्विवचनान्त बहुवचनान्त शब्ददेखि पनि त्यो प्रत्यय हुन्छ भन्ने कुरा सामान्य रूपमा

वर्ग्यम् ॥

**१०९०. शरीरावयवाच्च ४।३।५५॥**

दन्त्यम् । कण्ठ्यम् । **वा**.(अध्यात्मादेष्ठञिष्यते) । अध्यात्मं भवमाध्यात्मिकम् ॥

**१०९१. अनुशतिकादीनां च ७।३।२०॥**

एषामुभयपदवृद्धिर्ञिति णिति किति च । आधिदैविकम् । आधिभौतिकम् । ऐहलौकिकम् । पारलौकिकम् । आकृतिगणोऽयम् ॥

**१०९२. जिह्वामूलाङ्गुलेश्छः ४।३।६२॥**

---

बुझ्नु पर्छ । यहाँ प्रायः एकवचनान्त रूप दिइएको छ ।

**वर्ग्यम्-** वर्गे भवम् (वर्गमा भएको) यस विग्रहमा 'वर्ग+ङि'देखि यो वर्ग शब्द दिगादि गण भित्र पर्ने हुनाले "दिगादिभ्यो०"ले यत् प्रत्यय भयो । विभक्तिलुक् अकार लोप भयो, वर्ग्य शब्द बन्यो, त्यसदेखि सु आयो, अम् भयो, 'वर्ग्यम्' सिद्ध भयो ।

**शरीरावयवादिति-** शरीरको अवयववाचक शब्द प्रकृतिक सप्तम्यन्तसमर्थदेखि यत् प्रत्यय होस्, 'भवः' यो अर्थमा ।

**दन्त्यम्-** दन्तेषु भवम् (दाँतहरूमा हुने) यस विग्रहमा 'दन्त+सुप्'देखि "शरीरावयवाच्च"ले यत्प्रत्यय, विभक्तिलुक्, अकारको लोप भयो, 'दन्त्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'दन्त्यम्' सिद्ध भयो ।

**कण्ठ्यम्-** कण्ठे भवम् (गलामा हुने) यस विग्रहमा 'कण्ठ+ङि'देखि पूवसूत्रले यत्प्रत्यय भएर, पूर्ववत् 'कण्ठ्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'कण्ठ्यम्' सिद्ध भयो ।

**अध्यात्मादेरिति-** अध्यात्मआदिगणपठित शब्दप्रकृतिक सप्तम्यन्तसमर्थदेखि ठञ्प्रत्यय इष्ट छ ।

**आध्यात्मिकम्-** अध्यात्मम् भवम् (अध्यात्ममा भएको) यस विग्रहमा 'अध्यात्म+ङि'देखि ठञ् प्रत्यय भयो, ठका स्थानमा इक भयो, आदिवृद्धि, अकारको लोप भयो, 'आध्यात्मिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'आध्यात्मिकम्' सिद्ध भयो ।

**अनुशतिकेति-** अनुशतिक-आदि-गण पठित शब्दहरूमा उभयपदका स्थानमा आदिवृद्धि होस्, ञित्, णित् र कित् तद्धितप्रत्यय पर भएमा ।

**आधिदैविकम्-** अधिदेवे भवम् (देवतामा भएको) यस विग्रहमा "अध्यात्मादेष्ठञिष्यते" यो वार्तिकले 'अधिदेव+ङि'देखि ठञ् प्रत्यय भयो, ठका स्थानमा इक आदेश भयो, "अनुशतिकादीनां च"ले अधि र देव दुवै पदको आदिवृद्धि हुँदा 'आधि+दैव+इक' भयो, दैवको अकारको लोप भयो, 'आधिदैविक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'आधिदैविकम्' सिद्ध भयो ।

**आधिभौतिकम्-** अधिभूते भवम् (पृथ्वी आकाश आदि भूतमा भएको) यस विग्रहमा 'अधि+भूत+ङि'देखि ठञ् प्रत्यय, ठका स्थानमा इक आदेश, उभयपदका आदिका अच्को वृद्धि, अकार लोप भयो र 'आधिभौतिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'आधिभौतिकम्' सिद्ध भयो । यस्तै प्रकारले इहलोके भवम् (यो लोकमा हुने) यस विग्रहमा 'ऐहलौकिकम्' यो रूप र परलोके भवम् (परलोकमा हुने) यस विग्रहमा 'पारलौकिकम्' यी दुई रूप पनि ठञ् प्रत्यय भएर पूर्ववत् सिद्ध हुन्छन् ।

**आकृतिरिति-** यो अनुशतिकादि आकृतिगण हो । अर्थात् जहाँ जहाँ उभयपदवृद्धि भएको देखिन्छ, त्यहाँ अनुशतिकादि गण भन्ने बुझ्नु पर्दछ । त्यसकारण चातुर्विद्य, सार्वभौम आदि रूप पनि सिद्ध हुन्छन् ।

**जिह्वामूलेति-** जिह्वामूल शब्द र अङ्गुलि शब्द प्रकृतिक सप्तम्यन्तसमर्थदेखि 'भवः' यस अर्थमा छ प्रत्यय होस् ।

---

जिह्वामूलीयम् । अङ्गुलीयम् ॥

**१०९३. वर्गान्ताच्च ४।३।६३॥**

कवर्गीयम् ॥

**१०९४. तत आगतः ४।३।७४॥**

स्रुघ्नादागतः स्रौघ्नः ॥

**१०९५. ठगायस्थानेभ्यः ४।३।७५॥**

शुल्कशालाया आगतः शौल्कशालिकः ॥

**१०९६. विद्यायोनिसम्बन्धेभ्यो वुञ् ४।३।७७॥**

औपाध्यायकः । पैतामहकः ॥

---

**जिह्वामूलीयम्**– जिह्वामूले भवम् (जिभ्रोका फेदमा हुने) यस विग्रहमा 'जिह्वामूल+ङि'देखि "जिह्वामूलाङ्गुलेः०" यो सूत्रले छ प्रत्यय भयो, छकारका स्थानमा ईय् आदेश भयो, अकारको लोप भयो । 'जिहामूलीय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'जिह्वामूलीयम्' सिद्ध भयो ।

**अङ्गुलीयम्(औंठी)**– अङ्गुल्यां भवम् (औंलामा भएको) यस विग्रहमा 'अङ्गुलि+ङि'देखि "जिह्वामूलाङ्गुलेः०"ले छप्रत्यय, छकारका स्थानमा ईय् आदेश, विभक्तिलुक्, अकारलोप भयो, 'अङ्गुलीय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अंङ्गुलीयम्' सिद्ध भयो ।

**वर्गान्तादिति**– वर्गान्तशब्दप्रकृतिक सप्तम्यन्तसमर्थदेखि 'भवः' यो अर्थमा छ प्रत्यय होस् ।

**कवर्गीयम्**– कवर्गे भवम् (कवर्गमा हुने) यस विग्रहमा 'कवर्ग+ङि'देखि "वर्गान्ताच्च०"ले छप्रत्यय भयो, ईय्आदेश, विभक्तिलुक्, अकारलोप भयो, 'कवर्गीय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'कवर्गीयम्' सिद्ध भयो ।

**तत इति**– पञ्चम्यन्तसमर्थदेखि 'आगतः' यस अर्थमा अण्आदि प्रत्यय र घआदि प्रत्यय होऊन् ।

**स्रौघ्नः**– स्रुघ्नादागतः (स्रुघ्नदेशबाट आएको) यस विग्रहमा 'स्रुघ्न+ङसि'देखि "तत आगतः"ले अण् प्रत्यय भयो, 'स्रुघ्न+ङसि+अ' भयो, विभक्तिलुक्, आदिवृद्धि, अकारलोप भयो, 'स्रौघ्न' शब्द बन्यो, त्यसदेखि सु आयो, 'स्रौघ्नः' सिद्ध भयो ।

**ठगिति**– आयस्थान वाचक (आम्दानीको ठाउँलाई बताउने) शब्दप्रकृतिक पञ्चम्यत समर्थ देखि ठक् प्रत्यय होस् ।

**शौल्कशालिकः**– शुल्कशालाया आगतः (करकार्यालयबाट आएको) यस विग्रहमा 'शुल्कशाला+ङसि'देखि "ठगायस्थानेभ्यः"ले ठक् प्रत्यय भयो, ठका स्थानमा इक आदेश, विभक्तिलुक्, आदिवृद्धि, आकारलोप भयो, 'शौल्कशालिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'शौल्कशालिकः' सिद्ध भयो ।

**विद्योयोनीति**– विद्यासंबन्ध र योनिसम्बन्धवाचक पञ्चम्यन्तसमर्थदेखि वुञ् प्रत्यय होस्, 'आगतः' यो अर्थमा ।

**औपाध्यायकः**– उपाध्यायादागतः (उपाध्यायबाट आएको) यस विग्रहमा विद्यार्सबन्धवाचक पन्चम्यन्त 'उपाध्याय+ङसि'देखि "विद्यायोनिसम्बन्धे०"ले वुञ् प्रत्यय भयो, वुका स्थानमा अक भयो, विभक्तिलुक्, आदिवृद्धि, अकारलोप भयो, 'औपाध्यायक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'औपाध्यायकः' सिद्ध भयो ।

**पैतामहकः**– पितामहादागतः (पितामहबाट आएको) यस विग्रहमा योनिसंबन्धवाचक 'पितामह+ङसि'देखि वुञ् प्रत्यय भयो, अक आदेश भयो, विभक्तिलुक्, आदिवृद्धि, अकारलोप भयो, 'पैतामहक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पैतामहकः' सिद्ध भयो ।

---

१०९७. **हेतुमनुष्येभ्योऽन्यतरस्यां रूप्यः** ४।३।८१॥

समादागतं समरूप्यम् । पक्षे– गहादित्वाच्छः । समीयम् । विषमीयम् । देवदत्तरूप्यम् । दैवदत्तम् ॥

१०९८. **मयट् च** ४।३।८२॥

सममयम् । देवदत्तमयम् ॥

१०९९. **प्रभवति** ४।३।८५॥

हिमवतः प्रभवति हैमवती गङ्गा ॥

११००. **तद् गच्छति पथिदूतयोः** ४ । ३ । ८५ ॥

स्रौघ्नः पन्था दूतो वा ॥

११०१. **अभिनिष्क्रामति द्वारम्** ४।३।८६॥

स्रुघ्नमभिनिष्क्रामति स्रौग्घ्नं कान्यकुब्जद्वारम् ॥

---

**हेतुमनुष्येभ्य इति**– हेतुवाचक र मनुष्यवाचक शब्दप्रकृतिक पञ्चम्यन्त समर्थदेखि विकल्पले रूप्य प्रत्यय होस्, 'आगतः' यस अर्थमा ।

**समरूप्यम्**– समादागतम् (सम्म ठाउँबाट आएको) यहाँ हेतुवाचक सम शब्दप्रकृतिक पञ्चम्यन्त समर्थ 'सम+ङसि'देखि रुप्य प्रत्यय भयो र विभक्तिलुक् भयो, समरूप्य शब्द बन्यो, त्यसदेखि सु आयो, 'समरूप्यम्' सिद्ध भयो ।

**विषमरूप्यम्**– विषमादागतम् (भिरालो ठाउँबाट आएको) यस विग्रहमा 'विषम+ङसि'देखि रूप्यप्रत्यय भयो र पूर्ववत् 'विषमरूप्यम्' सिद्ध भयो ।

**मयट् चेति**– हेतुवाचक र मनुष्यवाचक शब्दप्रकृतिक पञ्चम्यन्त समर्थदेखि मयट् प्रत्यय होस्, 'आगतः' यस अर्थमा ।

**सममयम्, देवदत्तमयम्**– यहाँ पञ्चम्यन्त सम शब्द र देवदत्त शब्ददेखि 'आगतः' यस अर्थमा मयट्प्रत्यय भएर पूर्ववत् यी रूप सिद्ध हुन्छन् ।

**प्रभवतीति**– पञ्चम्यन्त समर्थदेखि प्रभवति यस अर्थमा अण् आदि र घ आदि प्रत्यय होऊन् ।

**हैमवती**– गङ्गा (हिमालयबाट बहेकी गङ्गा) हिमवतः प्रभवति (हिमालयबाट पैदा हुन्छिन्) यस विग्रहमा 'हिमवत्+ङसि'देखि अण् प्रत्यय, विभक्तिलुक्, आदिवृद्धि, भएर 'हैमवत' भयो, स्त्रीत्वात् ङीप् प्रत्यय भयो, 'हैमवती' शब्द बन्यो, त्यसदेखि सु आयो, 'हैमवती' सिद्ध भयो ।

**तदिति**– द्वितीयान्त समर्थदेखि 'गच्छति' यस अर्थमा बाटो र दूत बुझिदामा अणआदि प्रत्यय र घआदि प्रत्यय होऊन् ।

**स्रौघ्नः**– स्रुघ्नं गच्छति पन्था दूतो वा (स्रुघ्न देशमा पुग्ने बाटो अथवा दूत) यस विग्रहमा 'स्रुघ्न+अम्' देखि अण् प्रत्यय भयो, र पूर्ववत् प्रक्रिया भयो, 'स्रौघ्न' शब्द बन्यो, त्यसदेखि सु आयो, 'स्रौघ्नः' सिद्ध भयो ।

**अभिनिष्क्रामति इति**– द्वितीयान्त समर्थदेखि 'अभिनिष्क्रामति' यस अर्थमा अण् आदि प्रत्यय र घआदि प्रत्यय होऊन्, द्वार अर्थात् ढोका बुझिँदामा ।

**स्रौघ्नम्**– स्रुघ्नम् अभिनिष्क्रामति द्वारम् (स्रुघ्न देशतर्फ निस्कने ढोका) यस विग्रहमा 'स्रुघ्न+अम्'देखि प्रकृत सूत्रले अण् प्रत्यय भयो, पूर्ववत् सबै प्रक्रिया भयो, 'स्रौघ्नम्' सिद्ध भयो ।

---

**११०२. अधिकृत्य कृते ग्रन्थे ४।३।८७।।**

शारीरकमधिकृत्य कृतो ग्रन्थः शारीरकीयः ॥

**११०३. सोऽस्य निवासः ४।३।८९।।**

स्रुघ्नो निवासोऽस्य स्रौग्घ्नः ॥

**११०४. तेन प्रोक्तम् ४।३।१०१।।**

पाणिनिना प्रोक्तं पाणिनीयम् ॥

**११०५. तस्येदम् ४।३।१२०।।**

उपगोरिदम् औपगवम् ॥

**इति शैषिकप्रकरणम् ।।५।।**

---

प्रयोग- स्रौघ्नं कान्यकुब्जद्वारम् (स्रुघ्नदेशतर्फ निस्कने कन्नौजदेशको ढोका ।)[१४८]

**अधिकृत्येति-** द्वितीयान्तसमर्थदेखि 'अधिकृत्य कृतो ग्रन्थः', यो अर्थमा अण्आदि प्रत्यय र घआदि प्रत्यय होऊन् । यहाँ कुत्सितं शरीरम् (निन्दित शरीर) यस विग्रहमा शरीर शब्ददेखि "कुत्सिते"ले क प्रत्यय भएर शरीरक शब्द बन्दछ, पुनः शरीरकस्यायम् (शरीर सम्बन्धी यो) यस विग्रहमा शरीरक शब्ददेखि "तस्येदम्"ले अण्प्रत्यय भएर 'शारीरक' शब्द बन्दछ । शारीरक भनेको जीवात्मा हो ।

**शारीरकीयः(वेदान्तको चतुर्लक्षणी सूत्र सन्दर्भ)**– शारीरकम् अधिकृत्य कृतो ग्रन्थः ( जीवात्मालाई अधिकार गरेर बनाइएको ग्रन्थ) यस विग्रहमा 'शारीरक+अम्'देखि "अधिकृत्य कृते ग्रन्थे" यो सूत्रको अर्थमा "वृद्धाच्छः"ले छ प्रत्यय भयो, छकारका स्थानमा ईय् आदेश, अकारलोप भयो, 'शारीरकीयः' शब्द बन्यो, त्यसदेखि सु आयो, 'शारीरकीयः' सिद्ध भयो ।

**सोऽस्येति–** प्रथमान्तसमर्थदेखि 'अस्य निवासः' यो अर्थमा अण्आदि प्रत्यय र घआदि प्रत्यय होऊन् ।

**स्रौघ्नः**– स्रुघ्नो निवासोऽस्य (स्रुघ्नदेश छ निवास यसको) यो विग्रहमा 'स्रुघ्न+सु'देखि अण्प्रत्यय भयो, पूर्ववत् 'स्रौघ्नः' सिद्ध भयो । यसको साधन प्रक्रिया धेरै ठाउमा बताइएको छ, यस शब्दमा विशेष प्रत्यय नहुने हुँदा सर्वत्र अण्प्रत्यय नै हुन्छ ।

**तेनेति–** तृतीयान्तसमर्थदेखि 'प्रोक्तम्' यस अर्थमा अण्आदि प्रत्यय होऊन् ।

**पाणिनीयम्**-पाणिनिना प्रोक्तम् (पाणिनिले भनिएको) यस अर्थमा 'पाणिनि+टा'देखि "तेन प्रोक्तम्"को अर्थमा "वृद्धाच्छः"ले छप्रत्यय भयो, छकारका स्थानमा ईय् आदेश भयो, 'पाणिनीय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पाणिनीयम्' सिद्ध भयो । प्रयोग- पाणिनीयम् व्याकरणम् (पाणिनिको व्याकरण)

**तस्येदमिति-** षष्ठ्यन्तसमर्थदेखि 'इदम्' यो अर्थमा अण्आदि प्रत्यय होऊन् ।

**औपगवम्-** उपगोरिदम् (उपगुको यो) यस विग्रहमा 'उपगु+ङस्'देखि 'तस्येदम्'ले अण्प्रत्यय, आदिवृद्धि भयो "ओर्गुणः"ले गुण, अव्आदेश भयो, 'औपगव' शब्द बन्यो, त्यसदेखि सु आयो, 'औपगवम्' सिद्ध भयो । यस शैषिक प्रकरणको बारेमा यी दुई कुरा बुझिरहनु आवश्यक छ ।

---

१४८ पहिले ठूलो शहर पर्खालले घेरिएको हुन्थ्यो र चारतर्फ ढोका हुन्थ्यो । जुन ढोकाबाट निस्केर जुनदेशतर्फ जान सकिन्छ त्यो ढोका त्यसदेशको नामबाट प्रसिद्ध हुन्थ्यो । यहाँ कन्नौजदेशको एउटा ढोकाबाट निस्केर यात्रा गर्दा स्रुघ्नदेशमा पुगिने हुँदा त्यो कन्नौजका ढोकाको नाम स्रौघ्न भयो ।

## अथ विकारार्थकप्रकरणम्

**११०६. तस्य विकारः ४।३।१३४॥**

**वा.**(अश्मनो विकारे टिलोपो वक्तव्यः) । अश्मनो विकारः, आश्मः । भास्मनः । मार्तिकः ॥

---

१. यहाँ कुनै सूत्रले प्रत्ययमात्र विधान गर्दछन्, कुनै सूत्रले अर्थमात्र भन्दछन् अतः दुवै सूत्रको एकवाक्यता गरेपछि समन्वय हुन्छ ।

"राष्ट्रावारपाराद् घखौ" "वृद्धाच्छः" इत्यादि सूत्रले प्रत्यय मात्र विधान गर्छन् भने, "तत्र जातः", "तत्र भवः", "तेन प्रोक्तम्", "तस्येदम्" इत्यादि सूत्रले समर्थविभक्ति र अर्थ बताउँछन् ।

जस्तै– 'राष्ट्रे जातः' 'राष्ट्रे भवः', यस अर्थमा "राष्ट्रावारपाराद् घखौ" यो सूत्रको "तत्र भवः", "तत्र जातः", यी दुई सूत्रसँग एकवाक्यता भएपछि घप्रत्यय हुन्छ र 'राष्ट्रिय'शब्द बन्दछ । त्यस्तै पाणिनिना प्रोक्तम् यहाँ "वृद्धाच्छः" यस सूत्रको "तेन प्रोक्तम्" यो सूत्रसँग एकवाक्यता हुन्छ र छप्रत्यय भएर 'पाणिनीयम्' रूप बन्दछ ।

२. अनेक अर्थमा यौटै प्रत्यय पनि बन्दछन् । शब्दको रूप समान भएपनि अर्थ फरक हुन्छ । प्रसङ्गानुसार अर्थ गर्नु पर्छ ।

**शैषिक प्रकरण सकियो ।**

----------------

**अब बिकारार्थक प्रकरण आरम्भ हुन्छ ।**

**तस्येति**– षष्ठचन्तसमर्थदेखि 'विकारः' यस अर्थमा अण् आदि प्रत्यय होऊन् । यहाँ घआदिप्रत्यय हुँदैनन् ती निवृत्त भए । "तस्येदम्"सम्म घआदिप्रत्ययको अनुवृत्ति हुन्छ । यहाँ पछि त्यसको अनुवृत्ति नआओस् भनेर पुनः यहाँ 'तस्य' पढिएको हो । "तस्येदम्"यो सूत्रबाट स्वत अनुवृत्ति आउनेमा यहाँ पुनः तस्य पढ्नाले अण् आदि र घ आदि प्रत्ययको अनुवृत्ति आउँदैन भन्ने बुभिन्छ ।

**(वा.) अश्मन इति**– अश्मन् शब्दको विकार अर्थमा टिको लोप होस् भन्नू ।

**आश्मनः**– अश्मनो विकारः (पत्थरको विकार) यस विग्रहमा 'अश्मन्+ङस्'देखि "तस्य विकारः०"ले अण्प्रत्यय, विभक्तिलुक् भयो, "अश्मनो विकारे टिलोपो वक्तव्यः" यस वार्तिकले टिलोप, आदिवृद्धि भयो, 'आश्म' शब्द बन्यो, त्यसदेखि सु आयो, 'आश्मः' सिद्ध भयो ।

**भास्मनः**– भस्मनो विकारः (खरानीको विकार) यस विग्रहमा 'भस्मन्+ङस्'देखि "तस्य विकारः"ले अण्प्रत्यय, विभक्तिलुक् भयो, "नस्तद्धिते"ले टिलोप पाएकोमा "अन्"ले निषेध, आदिवृद्धि भयो, 'भास्मन' शब्द बन्यो, त्यसदेखि सु आयो, 'भास्मनः' सिद्ध भयो ।

**मार्तिकः**– मृत्तिकाया विकारः (माटाको विकार) यस विग्रहमा 'मृत्तिका+ङस्'देखि "तस्य विकारः"ले अण् प्रत्यय, विभक्तिलुक्, आदिवृद्धि र आकारको लोप भयो, 'मार्तिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'मार्तिकः' सिद्ध भयो ।

**११०७. अवयवे च प्राण्यौषधिवृक्षेभ्यः ४।३।१३५॥**

चाद्विकारे । मयूरस्यावयवो विकारो वा मायूरः । मौर्वं काण्डं भस्म वा । पैप्पलम् ॥

**११०८. मयड्वैतयोर्भाषायामभक्ष्याच्छादनयोः ४।३।१४३॥**

प्रकृतिमात्रान्मयड्वा स्यात् विकारावयवयोः । अश्ममयम्, आश्मनम् । अभक्ष्येत्यादि किम् ? मौद्गः सूपः । कार्पासमाच्छादनम् ॥

**११०९. नित्यं वृद्धशरादिभ्यः ४।३।१४४॥**

---

**अवयवे चेति**– प्राणिवाचक, ओषधिवाचक र वृक्षवाचक शब्दप्रकृतिक षष्ठचन्त समर्थदेखि अवयव अर्थमा र चकार पढ्नाले विकार अर्थमा पनि अण् आदि प्रत्यय होऊन् ।

**मायूरः**– मयूरस्य विकारोऽवयवो वा (मयूरको अवयव अथवा विकार) यस विग्रहमा 'मयूर+ङस्'देखि "अवयवे च" यो सूत्रले अण् प्रत्यय, विभक्तिलुक्, आदिवृद्धि, अकार लोप भयो, 'मायूर' शब्द बन्यो, त्यसदेखि सु आयो, 'मायूरः' सिद्ध भयो ।

**मौर्वम्**– मूर्वाया अवयवम् विकारो वा (मूर्वा नामक ओषधिको अवयव अथवा विकार) यस विग्रहमा 'मूर्वा+ङस्'देखि अण् प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भयो, 'मौर्व' शब्द बन्यो, त्यसदेखि सु आयो, 'मौर्वम्' सिद्ध भयो । यसको प्रयोग- मौर्वं काण्डं भस्म वा (मूर्वा औषधिको हाँगा अथवा खरानी)

**पैप्पलम्**– पिप्पलस्य अवयवो विकारो वा (पीपलको अवयव अथवा विकार) यस विग्रहमा 'पिप्पल+ङस्'देखि "अवयवे च०"ले अण् प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भयो, 'पैप्पल' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पैप्पलम्' सिद्ध भयो । यसको प्रयोग- पैप्पलं काण्डं भस्म वा (पीपलको हाँगा अथवा खरानी)

**मयड्वैतयोरिति**– प्रकृतिमात्र अर्थात् यावत् षष्ठचन्तसमर्थदेखि लोकमा मयट् प्रत्यय होस् विकार र अवयव अर्थमा भक्ष्य र आच्छादन बुझिंदामा त नहोस् ।

**अश्ममयम्/आश्मनम्**– अश्मनो विकारोऽवयवो वा यस विग्रहमा 'अश्मन+ङस्'देखि "मयड् वैतयोः०"ले मयट् प्रत्यय भयो, विभक्तिलुक् नकारको "नलोपः प्रातिपदिकान्तस्य"ले लोप भयो, 'अश्ममय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अश्ममयम्' सिद्ध भयो । मयट् नभएको पक्षमा "तस्य विकारः"ले अण् प्रत्यय भयो, यो [१४९]अश्मन् शब्द पाषाणवाचक नहुनाले टिलोप भएन, विभक्तिलुक्, आदिवृद्धि भयो, 'आश्मन'शब्द बन्यो, त्यसदेखि सु आयो, 'आश्मनम्' सिद्ध भयो ।

**अभक्ष्येत्यादि किमिति**– भक्ष्य र आच्छादन नबुझिंदामा किन भन्नू ? नभन्ने हो भने मुद्गस्य विकारः (मुगीको विकार दाल) यस विग्रहमा 'मुद्ग+ङस्'देखि मयट् प्रत्यय होला र 'मुद्गमयः सूपः' यस्तो अनिष्ट रूप होला । सो नहोस् भनेर भक्ष्य र आच्छादन नबुझिंदामा भन्यौ । यहाँ मूँगको दाल भक्ष्य नै छ र मयट् प्रत्यय भएन । "तस्य विकारः"ले अण् प्रत्यय भयो र 'मौद्गः सूपः' भयो । त्यस्तै- कार्पासस्य विकारः, आच्छादनम् वा. (कपासको विकार अथवा ओढ्ने च्यादर) यस विग्रहमा पनि आच्छादन अर्थमा नहोस् भनेकोले प्रकृतसूत्रले मयट् प्रत्यय भएन अण् प्रत्यय नै भयो र 'कार्पासम्' भयो ।

**नित्यमिति**- वृद्धसंज्ञक शब्द र शरादिगण पठित शब्दप्रकृतिक षष्ठचन्त समर्थदेखि विकार र अवयव अर्थमा नित्य मयट् प्रत्यय होस् ।

---

१४९ न च "अश्मनो विकारे०" इति टिलोपःस्यादिति वाच्यम् । प्रसिद्धतरत्वेन पाषाण-वाचकस्यैवाश्मञ्छब्दस्य तत्र ग्रहीतुमुचितत्वात् । अत्र तु मदयन्तीपुत्रवाचकोऽश्मन् शब्दः (सि.कौ. तत्त्वबोधिनी टीका)

आम्रमयम् । शरमयम् ॥

**१११०. गोश्च पुरीषे ४।३।१४५॥**

गोः पुरीषं गोमयम् ॥

**११११. गोपयसोर्यत् ४।३।१६०॥**

गव्यम् । पयस्यम् ॥

**इति विकारार्थप्रकरणम्**

**(प्राग्दीव्यतीयाः समाप्ताः) ॥६॥**

---

**आम्रमयम्**– आम्रस्य विकारः, अवयवो वा (आँपको विकार अथवा अवयव) यस विग्रहमा "तस्य विकारः"लाई बाधेर "मयड्वैतयोः"ले वैकल्पिक मयट्प्रत्यय पाएकोमा "नित्यं वृद्धशरादिभ्यः"ले यो वृद्धसंज्ञक शब्द छ र नित्य मयट्प्रत्यय, विभक्तिलुक् भयो, 'आम्रमय'शब्द बन्यो, त्यसदेखि सु आयो, 'आम्रमयम्' सिद्ध भयो ।

**शरमयम्**– शराणाम् अवयवो विकारो वा (निगालाको अवयव अथवा विकार) यस विग्रहमा 'शर+आम्'देखि "तस्य विकारः"लाई बाधेर शरशब्द शरादिगण पठित हुनाले "नित्यं वृद्ध०"ले मयट्प्रत्यय भयो, 'शरमय'शब्द बन्यो, त्यसदेखि सु आयो 'शरमयम्' सिद्ध भयो ।

**गोश्चेति**– गोशब्द प्रकृतिक षष्ठचन्तसमर्थदेखि पुरीष(गोबर) बुझिंदामा मयट्प्रत्यय होस् ।

**गोमयम्**– गोः पुरीषम् (गाईको गोबर) यस विग्रहमा 'गो+ङस्'देखि "गोश्च पुरीषे"ले मयट् प्रत्यय भयो, विभक्तिलुक् भयो, 'गोमय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'गोमयम्' सिद्ध भयो ।

**गोपसोरिति**– गोशब्दप्रकृतिक षष्ठचन्तसमर्थदेखि यत् प्रत्यय होस्, विकार र अवयव अर्थमा ।

**गव्यम्**– गोर्विकारोऽवयवो वा (गाईको विकार अथवा अवयव) यस विग्रहमा 'गो+ङस्'देखि "गोपयसोर्यत्"ले यत् प्रत्यय, विभक्तिलुक् भयो, "वान्तो यि प्रत्यये"ले अव् आदेश भयो, 'गव्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'गव्यम्' सिद्ध भयो ।

**पयस्यम्**– पयसो विकारः (दूधको विकार) यस विग्रहमा 'पयस्+ङस्'देखि "गोपयसोर्यत्"ले यत् प्रत्यय भयो, विभक्तिलुक् भयो, 'पयस्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पयस्यम्' सिद्ध भयो ।

**विकारार्थप्रकरण समाप्त भयो ।**

**(प्राग्दीव्यतीय प्रत्ययको प्रकरण पनि समाप्त भयो ।)**

---

## अथ ठगधिकारप्रकरणम्

**१११२. प्राग्वहतेष्ठक् ४।४।१॥**
तद्वहतीत्यतः प्राक् ठगधिक्रियते ॥
**१११३. तेन दीव्यति खनति जयति जितम् ४।४।२॥**
अक्षैर्दीव्यति खनति जयति जितो वा आक्षिकः ॥
**१११४. संस्कृतम् ४।४।३॥**
दध्ना संस्कृतं दाधिकम् । मारीचिकम् ॥
**१११५. तरति ४।४।५॥**
तेनेत्येव । उडुपेन तरति औडुपिकः ॥
**१११६. चरति ४।४।८॥**
तृतीयान्ताद् गच्छति, भक्षयतीत्यर्थयोष्ठक् स्यात् । हस्तिना चरति हास्तिकः ।

---

**अब ठगधिकार प्रकरण प्रारम्भ गरिन्छ ।**

**प्राग्वहतेरिति**– "तद्वहति रथ युगप्रासङ्गम्" यो सूत्रदेखि पूर्वसम्म ठक् प्रत्ययको अधिकार गरिन्छ ।

**तेनेति**– तृतीयान्तसमर्थदेखि दीव्यति, खनति, जयति, जितम्, यी चार अर्थमा ठक् प्रत्यय होस् ।

**आक्षिकः**– अक्षैर्दीव्यति, खनति, जयति, जितं वा (जूवा खेल्छ, खन्छ, जित्छ अथवा जित्यो), यी अर्थ बुझिंदामा 'अक्ष+भिस्'देखि "तेन दीव्यति०"ले ठक् प्रत्यय, ठका स्थानमा इक, विभक्तिलुक्, आदिवृद्धि, अकारलोप भयो, 'आक्षिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'आक्षिकः' सिद्ध भयो ।

**संस्कृतमिति**– तृतीयान्त समर्थदेखि 'संस्कृतम्' यो अर्थमा ठक्प्रत्यय होस् ।

**दाधिकम्**– दध्ना संस्कृतम् (दहीले संस्कार गरिएको) यस विग्रहमा "संस्कृतम्"ले ठक्प्रत्यय, इक आदेश, विभक्तिलुक्, आदिवृद्धि, इकार लोप भयो, 'दाधिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'दाधिकम्' सिद्ध भयो ।

यसको प्रयोग- दाधिकं व्यञ्जनम् (दहीले संस्कार गरिएको अचार)

**मारीचिकम्**- मरीचेन संस्कृतम् (मरीच हालेर बनाइएको) यस विग्रहमा 'मरीच+टा'देखि "संस्कृतम्"ले ठक् प्रत्यय आदि पूर्ववत् भयो, 'मारीचिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'मारीचिकम्' सिद्ध भयो ।

**तरतीति**– तृतीयान्तसमर्थदेखि तर्छ यस अर्थमा ठक् प्रत्यय होस् ।

**औडुपिकः**– उडुपेन तरति (डुङ्गाले तर्छ) यस अर्थमा 'उडुप+टा'देखि "तरति"ले ठक्प्रत्यय पूर्ववत् सबै प्रक्रिया भयो, 'औडुपिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'औडुपिकः' सिद्ध भयो ।

**चरतीति**– तृतीयान्तसमर्थदेखि चरति (हिंड्छ अथवा खान्छ) यस अर्थमा ठक्प्रत्यय होस् ।

**हास्तिकः(हात्तीसवार)**– हस्तिना चरति (हात्तीले हिंड्छ) यस विग्रहमा 'हस्तिन्+टा'देखि ठक् प्रत्यय

दध्ना चरति दाधिकः ॥

**१११७. संसृष्टे ४।४।२२॥**

दध्ना संसृष्टं दाधिकम् ॥

**१११८. उञ्छति ४।४।३२॥**

बदराण्युञ्छति बादरिकः ॥

**१११९. रक्षति ४।४।३३॥**

समाजं रक्षति सामाजिकः ॥

**११२०. शब्ददर्दुरं करोति ४।४।३४॥**

शब्दं करोति शाब्दिकः । दर्दुरं करोति दार्दुरिकः ॥

**११२१. धर्मं चरति ४।४।४१॥**

धार्मिकः ।

---

इक आदेश, विभक्तिलुक्, टिलोप भयो, 'हास्तिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'हास्तिकः' सिद्ध भयो ।

**दाधिकः**- दध्ना चरति (दहीसँग खान्छ) यस विग्रहमा चरति सूत्रले ठक्प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भयो, 'दाधिकः' सिद्ध भयो ।

**संसृष्ट इति**- तृतीयान्त समर्थदेखि संसृष्ट (मिसिएको भन्ने) अर्थमा ठक्प्रत्यय होस् ।

**दाधिकम्**- दध्ना संसृष्टम् (दहीले मुछिएको) यस विग्रहमा 'दधि+टा'देखि "संसृष्टे" यो सूत्रले ठक्प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भयो, 'दाधिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'दाधिकम्' सिद्ध भयो ।

यसको प्रयोग- दाधिकं व्यञ्जनमोदनं वा (दहीले मुछिएको भात अथवा दही मिसाएर बनाएको अचार ।)

**उञ्छतीति**- द्वितीयान्त समर्थदेखि उञ्छति (शिलाखोज्छ) यस अर्थमा ठक्प्रत्यय होस् ।

**बादरिकः**- बदराणि उञ्छति (बयरका शिला खोज्छ) यस विग्रहमा 'बदर+शस्'देखि "उञ्छति"ले ठक्प्रत्यय, इकआदेश, विभक्तिलुक् आदि पूर्ववत् प्रक्रिया भएर 'बादरिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'बादरिकः' सिद्ध भयो ।

**शब्देति**- शब्द-शब्द र दर्दुरशब्दप्रकृतिक द्वितीयान्तसमर्थदेखि 'करोति' यस अर्थमा ठक् प्रत्यय होस् ।

**शाब्दिकः**- शब्दं करोति (शब्द बनाउँछ) यस विग्रहमा 'शब्द+अम्'देखि "शब्ददर्दुर०"ले ठक्प्रत्यय भयो, विभक्तिलुक्, इक आदेश आदि प्रक्रिया पूर्ववत् भएर 'शाब्दिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'शाब्दिकः' सिद्ध भयो ।

**दार्दुरिकः**- [१५०] दर्दुरं करोति (दर्दुर नाम भएको माटाको भाँडो बनाउँछ) यस विग्रहमा 'दर्दुर+अम्'देखि "शब्ददर्दुर०"ले ठक्प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भएर 'दार्दुरिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'दार्दुरिकः' सिद्ध भयो ।

**धर्ममिति**- धर्म शब्द प्रकृतिक द्वितीयान्त समर्थदेखि आचरण गर्छ भन्ने अर्थमा ठक्प्रत्यय होस ।

**धार्मिकः**- धर्मं चरति (धर्म गर्छ) यस विग्रहमा 'धर्म+अम्'देखि "धर्मं चरति"ले ठक् प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भयो, 'धार्मिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'धार्मिकः' सिद्ध भयो ।

---

१५० "दर्दुरस्तोयदे भेके वाद्यभाण्डाद्रिभेदयोः" मेदिनीकोश, रान्तवर्ग १६७ श्लोक ।

**वा.**(अधर्माच्चेति वक्तव्यम्) । आधर्मिकः ॥

**११२२. शिल्पम् ४।४।५७।।**

मृदङ्गवादनं शिल्पमस्य मार्दङ्गिकः ॥

**११२३. प्रहरणम् ४ । ४ । ५७ ।।**

तदस्येत्येव । असिः प्रहरणमस्य आसिकः । धानुष्कः ॥

**११२४. शीलम् ४।४।६१।।**

अपूपभक्षणं शीलमस्य आपूपिकः ॥

---

**(वा) अधर्माच्चेति-** अधर्म शब्दप्रकृतिक द्वितीयान्त समर्थदेखि पनि 'चरति' यस अर्थमा ठक् प्रत्यय होस् भन्नू ।

**आधर्मिकः-** अधर्मं चरति (पाप गर्छ) यस विग्रहमा 'अधर्म+अम्'देखि "अधर्माच्चेति" यो वार्तिकले ठक् प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भएर 'आधर्मिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'आधर्मिकः' सिद्ध भयो ।

यहाँ नञ् समास गरेर न धर्म चरति यस्तो विग्रह राखेर गर्दा पनि आधर्मिक रूप सिद्ध हुन्छ, यो वार्तिक किन चाहियो ? भन्ने शङ्का उठ्छ, तर त्यसो गर्दा 'धर्म नगर्ने' भन्ने मात्र अर्थ आउँछ । अधर्मशब्ददेखि ठक् प्रत्यय गर्दा 'न धर्मः, अधर्मं चरति' (पाप गर्छ) भन्ने अर्थ आउँछ, त्यो अर्थको अपेक्षा गरेर यो वार्तिक पढिएको हो । धर्म नगर्नु अर्कै हो । पाप गर्नु अर्कै हो ।

**शिल्पम्-** प्रथमान्त समर्थदेखि अस्य शिल्पम् (यसको सीप छ) यस अर्थमा ठक् प्रत्यय होस् ।

**मार्दङ्गिकः-** मृदङ्गवादनं शिल्पमस्य (मादल बजाउने सीप छ यसको) यो विग्रहमा 'मृदङ्ग+सु'देखि "शिल्पम्"ले ठक् प्रत्यय भयो, विभक्तिलुक्, इक आदेश, अकार लोप भयो, 'मार्दङ्गिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'मार्दङ्गिकः' सिद्ध भयो । यहाँ मृदङ्ग शब्दको मृदङ्गवादन अर्थमा लक्षणा छ । यस्तै प्रकारले- वेणुवादनं शिल्पमस्य यो विग्रहमा ठक् प्रत्यय भएर पूर्ववत् 'वैणविकः' सिद्ध हुन्छ ।

**प्रहरणमिति-** प्रथमान्तसमर्थदेखि प्रहरणम् अस्य (हतियार छ यसको) यस अर्थमा ठक्प्रत्यय होस् ।

**आसिकः-** असिः प्रहरणम् अस्य (तरबार अथवा हँसिया छ हतियार यसको) यस विग्रहमा 'असि+सु'देखि "प्रहरणम्" यो सूत्रले ठक्प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भएर 'आसिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'आसिकः' सिद्ध भयो ।

**धानुष्कः-** धनुः प्रहरणम् अस्य (धनु छ हतियार यसको) यस विग्रहमा 'धनुष्+सु'देखि "प्रहरणम्"ले ठक्प्रत्यय भयो, ठका स्थानमा इक पाएको बाधेर "इसुसुक्तान्तात्कः"ले क आदेश भयो, विभक्तिलुक् भयो, आदिवृद्धि भयो, 'धानुष्क' शब्द बन्यो, त्यसदेखि सु आयो, 'धानुष्कः' सिद्ध भयो ।

**धानुष्कः** यहाँ "इसुसुक्तान्तात्कः"ले मूर्धन्यषकारलाई दन्त्य सकार नै देख्छ (अथवा षत्व गर्नु भन्दा पहिले नै 'क'आदेश हुन्छ ।

**शीलमिति-** प्रथमान्त समर्थदेखि "शीलम्"ले यस अर्थमा ठक् प्रत्यय होस् ।

**आपूपिकः-** अपूपभक्षणं शीलमस्य (मालपूवा खाने सोख छ जसको) यस विग्रहमा 'अपूप+सु'देखि "शीलम्"ले ठक् प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भएर 'आपूपिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'आपूपिकः' सिद्ध भयो । यहाँ पनि अपूप शब्दको अपूपभक्षण गर्नुमा लक्षणा

**११२५. निकटे वसति ४।४।७३॥**

नैकटिको भिक्षुकः ॥

## इति ठगधिकारप्रकरणम्

(प्राग्वहतीयाः समाप्ताः) ॥७॥

---

हुन्छ । उसो भए अमरकोशमा 'आपूपिकः कान्दविको भक्ष्यकार इमे त्रिषु' भनेर 'आपूपिक'शब्दलाई मालपुवा बनाउनेका नाममा राखिएको छ, यहाँ खानेको नाम कसरी भयो ? यो शंका नगर्नू । त्यहाँ 'आपूपिक'शब्द, "तदस्य पण्यम्" यो सूत्रले अपूपाः पण्यम् अस्य (मालपूवा छ बिक्री गर्ने चीज यसको) यो विग्रहमा ठक् प्रत्यय भएर बनेको हो ।

**निकट इति-** निकट शब्दप्रकृतिक सप्तम्यन्त समर्थदेखि 'वसति' यस अर्थमा ठक् प्रत्यय होस् ।

नैकटिकः- निकटे वसति (नजीकै बस्छ) यस विग्रहमा 'निकट+ङि'देखि "निकटे वसति" यो सूत्रले ठक्प्रत्यय भयो, विभक्तिलुक्, इक आदेश, आदिवृद्धि, अकार लोप भयो, 'नैकटिकः' शब्द बन्यो, त्यसदेखि सु आयो, 'नैकटिकः' सिद्ध भयो ।

यसको प्रयोग- नैकटिको भिक्षुः (नजिकै रहने भिक्षुक) । अझ यसको अर्थ स्पष्ट गर्न ग्रामनैकटिको भिक्षु (गाउँका नजिकमा रहने भिक्षुक) यस्तो प्रयोग गर्ने हो भने ठीक हुन्छ । अर्थात् भिक्षामागन सजिलो होस् भनी जो गाउँको नजिकै बस्छ ।

**ठगधिकार प्रकरण समाप्त भयो ।**

---

## अथ यदधिकारप्रकरणम्

**११२६. प्राग्घिताद्यत् ४।४।७५॥**
तस्मै हितमित्यतः प्राग् यदधिक्रियते ॥
**११२७. तद्वहतिरथयुगप्रासङ्गम् ४।४।७६॥**
रथं वहति रथ्यः । युग्यः । प्रासङ्ग्यः ॥
**११२८. धुरो यड्ढकौ ४।४।७७॥**
हलि चेति दीर्घे प्राप्ते–
**(सू.नं.६७९.) "न भकुर्छुराम्"** ८।२।७९॥ भस्य कुर्छुरोश्चोपधाया इको दीर्घो न स्यात् । इति दीर्घनिषेधे । धुर्यः । धौरेयः ॥

---

**अब यदधिकार प्रकरण आरम्भ गरिन्छ ।**

**प्राग्घितादिति**– "तस्मै हितम्" यो सूत्रदेखि पूर्वसम्म यत् प्रत्ययको अधिकार गरिन्छ ।

**तद्वहतीति**– रथ, युग, प्रासङ्ग यी शब्द प्रकृतिक द्वितीयान्त समर्थदेखि वहति (वोक्छ) यस अर्थमा यत्प्रत्यय होस् ।

**रथ्यः**– रथं वहति (रथ बोक्छ) यस विग्रहमा 'रथ+अम्'देखि "तद्वहति०" यो सूत्रले यत् प्रत्यय भयो, विभक्तिलुक् भयो, "यचि भम्"ले रथलाई भसंज्ञा भएपछि, "यस्येति च"ले रथका अकारको लोप भयो, 'रथ्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'रथ्यः' सिद्ध भयो ।

यसको प्रयोग- रथ्योऽश्वः (रथ बोक्ने घोडा)

**युग्यः**– युगं वहति यस विग्रहमा 'युग+अम्'देखि "तदवहति०"ले यत्प्रत्यय भयो, पूर्ववत् सबै प्रक्रिया भएर 'युग्यः' सिद्ध भयो । प्रयोग-युग्योऽनड्वान् (जुवा बोक्ने गोरु)

**प्रासङ्ग्यः**– प्रासङ्गं वहति (दाउने काठ बोक्छ) यस विग्रहमा 'प्रासङ्ग+अम्'देखि उक्त सूत्रले यत्प्रत्यय भयो, पूर्ववत् सबै प्रक्रिया भयो, 'प्रासङ्ग्यः' सिद्ध भयो । यसको प्रयोग- प्रासङ्ग्यो वत्सतरः (दाउने काठ बोक्ने बाच्छो) । गोरुको बाच्छो (बहर)लाई दाउँदा, काँधमा राखिने गह्रुङ्गो काठलाई प्रासङ्ग भन्दछन् ।

**धुर इति**– घुर शब्दप्रकृतिक द्वितीयान्तसमर्थदेखि वहति यो अर्थमा यत् प्रत्यय र ढक् प्रत्यय होऊन् । "हलि च"ले दीर्घ पाएमा-

**न भेति**– भसंज्ञक कुर् र छुर्का उपधाका स्थानमा दीर्घ नहोस् ।

**धुर्यः**– धुरं वहति (भारी बोक्छ) यस विग्रहमा 'धुर+अम्'देखि "धुरो यड्ढकौ"ले यत्प्रत्यय भयो, 'धुर+य'भयो, "हलि च"ले धुर्का उपधाको दीर्घ पाएको थियो, "न भकुर्छुराम्"ले दीर्घ निषेध भयो, 'धुर्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'धुर्यः' सिद्ध भयो ।

**धौरेयः**– धुरं वहति (भारी बोक्छ) यही विग्रहमा 'धुर+अम्'देखि "धुरो यड्ढकौ"ले ढक् भयो ढकारका स्थानमा एय् आदेश भयो, विभक्तिलुक्, आदिवृद्धि भयो, 'धौरेय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'धौरेयः' सिद्ध भयो ।

---

१९२९. **नौवयोधर्मविषमूलमूलसीतातुलाभ्यस्तार्यतुल्यप्राप्यवध्यानाम्यसमसमितसंमितेषु ।४।४।९१॥**

नावा तार्यं नाव्यं जलम् । वयसा तुल्यो वयस्यः । धर्मेण प्राप्यं धर्म्यम् । विषेण वध्यो विष्यः । मूलेन आनाम्यं मूल्यम् । मूलेन समो मूल्यः । सीतया समितं सीत्यं क्षेत्रम् ।

---

यसको प्रयोग- विद्वद् धौरेयः (विद्वान्को भार वहन गर्ने व्यक्ति अथवा विद्वान्मा भार वहन गर्ने व्यक्ति) यहाँ धौरेयशब्दको बौद्धिकभार भन्ने अर्थ छ ।

सामान्य रूपमा गह्रुङ्गो भारिबोक्ने अर्थमा पनि यो धौरेय शब्दको प्रयोग हुन्छ । जस्तै- धौरेयो गौः (भारी बोक्ने गोरु) अतः धौरेय शब्दले सामान्य भार र बौद्धिक भार दुवै बुझाउँछ ।

**नौवय इति-** नौशब्द, वयस् शब्द, धर्म शब्द, विष शब्द, मूल शब्द, मूल शब्द, सीता शब्द, तुला शब्द यी शब्दप्रकृतिक तृतीयान्त समर्थदेखि क्रमैसँग तार्य, तुल्य, प्राप्य, वध्य, आनाम्य, **सम**, समित, संमित, यी अर्थ बुझिंदामा यत् प्रत्यय होस् ।

**नाव्यम् जलम्-** नावा तार्यम् (डुंगाले तर्न योग्य जल) यो अर्थमा 'नौ+टा'देखि "नौवयो०"ले यत् प्रत्यय, विभक्तिलुक्, आव् आदेश भयो, 'नाव्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'नाव्यम्' सिद्ध भयो ।

**वयस्यः(समान उमेर भएको साथी)-** वयसा तुल्यः (उमेरले बराबर) यस विग्रहमा 'वयस्+टा'देखि "नौवयो०"ले यत् प्रत्यय भयो, विभक्तिलुक् भयो, 'वयस्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'वयस्यः' सिद्ध भयो ।

**धर्म्यम्-** धर्मेण प्राप्यम् (धर्मले पाउन सकिने) यस विग्रहमा 'धर्म+टा'देखि उक्त सूत्रले यत् प्रत्यय, विभक्तिलुक्, भसंज्ञा, अकारलोप भयो, 'धर्म्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'धर्म्यम्' सिद्ध भयो ।

**विष्यः-** विषेण वध्यः (विषद्वारा मार्न योग्य) यस विग्रहमा 'विष+टा'देखि यत्प्रत्यय भयो, पूर्ववत् विभक्तिलुक् आदि भयो, 'विष्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'विष्यः' सिद्ध भयो । ('विष्यो विषेण यो वध्यः' (अमरकोष) ।

**मूल्यम्-** मूलेन आनाम्यम् (मूलधन र आफ्नो नाफा सहित सङ्कलित धन) यस विग्रहमा 'मूल+टा'देखि "नौवयो."ले यत् प्रत्यय, विभक्तिलुक्, अकारको "यस्येति च"ले लोप भयो, 'मूल्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'मूल्यम्' सिद्ध भयो ।

मूल्यभित्र आफ्नो परेको धन र नाफा दुवै हुन्छन् । जुनसुकै व्यापारीले विक्रेय वस्तुमा आफूले खरिदेको पैसा र केही नाफा राखेर रेट बनाउँछ त्यसलाई दर भाउ अर्थमा मूल्य भनिन्छ ।

**मूल्यः(फेद जस्तै, कारण जस्तै)-** मूलेन समः (फेदले तुल्य) यस विग्रहमा 'मूल+टा'देखि उक्त सूत्रले यत् प्रत्यय, विभक्तिलुक्, अकारको लोप भयो, 'मूल्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'मूल्यः' सिद्ध भयो ।

**सीत्यम्-** सीतया समितम् (हलाको सियोले सम्याइएको) यस विग्रहमा 'सीता+टा' देखि उक्त सूत्रले यत्प्रत्यय, विभक्तिलुक्, आकारको लोप भयो, 'सीत्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'सीत्यम्' सिद्ध भयो ।

प्रयोग–सीत्यं क्षेत्रम् (हलाले जोतेको सियोद्वारा सम्याइएको खेत) ।

तुलया संमितं तुल्यम् ॥

**११३०. तत्र साधुः ४।४।९८॥**

अग्रे साधुः–अग्र्यः । सामसु साधुः सामन्यः । ये चाभावकर्मणोरिति प्रकृतिभावः । कर्मण्यः । शरण्यः ॥

**११३१. सभाया यः ४।४।१०५॥**

सभ्यः ॥

**इति यतोऽवधिः**

**(प्राग्घितीयाः समाप्ताः) ॥८॥**

---

**तुल्यम्-** तुलया संमितम् (तुलोद्वारा तौलेर बराबर गरिएको) यस विग्रहमा 'तुला+टा'देखि प्रकृतसूत्रले यत् प्रत्यय, विभक्तिलुक्, आकारलोप भएर 'तुल्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'तुल्यम्' सिद्ध भयो ।

प्रयोग–निष्कतुल्यं सुवर्णम् (एकतोला बराबर सुन)

**तत्रेति-** सप्तम्यन्त समर्थदेखि 'साधुः' (कुशल) यस अर्थमा यत्प्रत्यय होस् ।

**अग्रयः-** अग्रे साधुः (अगाडि रहन कुशल) यस अर्थमा 'अग्र+ङि'देखि "तत्र साधुः"ले यत् प्रत्यय भयो, विभक्तिलुक्, अग्रका अकारको "यस्येति च"ले लोप भयो, 'अग्र्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'अग्र्यः' सिद्ध भयो ।

**सामन्यः-** सामसु साधुः (साम गाउनमा कुशल, सान्त्वना दिन कुशल) यस विग्रहमा 'सामन्+सुप्'देखि प्रकृतसूत्रले यत् प्रत्यय भयो, टिलोप पाएकोमा "ये चाभावकर्मणोः"ले प्रकृतिभाव भयो, 'सामन्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'सामन्यः' सिद्ध भयो ।

यस्तै प्रकारले कर्मणि साधु यस विग्रहमा 'कर्मण्यः' र शरणे साधुः यस विग्रहमा 'शरण्यः' यी रूप पनि बन्दछन् ।

**सभाया इति-** सभा शब्दप्रकृतिक सप्तम्यन्त समर्थदेखि य प्रत्यय होस् साधुः (कुशल) यो अर्थमा ।

**सभ्यः-** सभायां साधुः (सभामा कुशल) यस विग्रहमा 'सभा+ङि'देखि यत् प्रत्यय भयो, विभक्तिलुक् भयो, "यस्येति च"ले आकारको लोप भयो, 'सभ्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'सभ्यः' सिद्ध भयो ।

**यत्प्रत्ययको अवधि सकियो**

------------------

**प्राग्घितीय प्रत्ययको प्रकरण समाप्त भयो ।**

## अथ छयतोरधिकारप्रकरणम्

**११३२. प्राक् क्रीताच्छः ५।१।१॥**

तेन क्रीतमित्यतः प्राक् छोऽधिक्रियते ॥

**११३३. उगवादिभ्यो यत् ५।१।२॥**

प्राक् क्रीतादित्येव । उवर्णान्ताद् गवादिभ्यश्च यत् स्यात् । छस्यापवादः । शङ्कवे हितं शङ्कव्यं दारु । गव्यम् । **वा.**(नाभि नभं च) । नभ्योऽक्षः । नभ्यमञ्जनम् ॥

**११३४. तस्मै हितम् ५।१।५॥**

---

**अब छप्रत्यय र यत्प्रत्ययको अधिकारको प्रकरण शुरू गरिन्छ ।**

**प्राक् क्रीतादिति-** "तेन क्रीतम्" भन्ने सूत्रदेखि पूर्वसम्म छ प्रत्ययको अधिकार गरिन्छ ।

**उगवादिभ्य इति-** उवर्णान्त शब्द र गोआदि शब्ददेखि यत् प्रत्यय होस्, "तेन क्रीतम्" भन्ने सूत्रदेखि पूर्वका (प्राक्क्रीतीय)[१५१] अर्थमा । समर्थविभक्ति ती ती सूत्रमा छन् । अतः यहाँ शब्ददेखिमात्र प्रत्यय बताइन्छ । यो यत् प्रत्यय, छ प्रत्ययको अपवाद हो ।

**शङ्कव्यम् दारु-** शङ्कवे हितम् (किलो बनाउन योग्य) यस विग्रहमा 'शङ्कु+ङे'देखि "प्राक्क्रीताच्छ"लाई बाधेर शंङ्कुशब्द उवर्णान्त हुनाले "उगवादिभ्यः०"ले यत्प्रत्यय भयो, भसंज्ञा भयो, 'ओर्गुणः"ले गुण, अव्आदेश भयो, 'शङ्कव्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'शङ्कव्यम्' सिद्ध भयो । प्रयोग -शङ्कव्यं दारु (कीलोको निमित्त योग्य काठ)

**गव्यम्-** गोभ्यो हितम् (गाईलाई हित) यस विग्रहमा 'गो+भ्यस्'देखि "उगवादिभ्यः०"ले यत् प्रत्यय, विभक्तिलुक्, अव् आदेश भयो, 'गव्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'गव्यम्' सिद्ध भयो ।

**(वा.)नाभि नभमिति-** नाभिशब्ददेखि यत् प्रत्यय होस् नाभि शब्दका स्थानमा नभ आदेश पनि होस्, प्राक्क्रीतीय अर्थमा ।

**नभ्योऽक्षः-** नाभये हितः (नाभिलाइ हित) यस विग्रहमा 'नाभि+ङे'देखि "नाभि नभं च"यो वार्तिकले यत् प्रत्यय, नाभि शब्दका स्थानमा नभ आदेश, विभक्तिलुक्, अकारको लोप भयो, 'नभ्य'शब्द बन्यो, त्यसदेखि सु आयो 'नभ्यः' सिद्ध भयो । प्रयोग- नभ्योऽक्षः (चक्काको मध्यभागलाई हित गर्ने अक्ष) चक्काको माझको प्वाललाई अक्ष भन्दछन् ।

**नभ्यमञ्जनम्-** नाभये हितम् (नाभिको निमित्त हित) यो विग्रहमा 'नाभि+ङे'देखि उक्त वार्तिकले यत् प्रत्यय, नाभि शब्दका स्थानमा नभ आदेश आदि पूर्ववत् भयो, 'नभ्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'नभ्यम्' सिद्ध भयो । यहाँ नपुंसकलिङ्गी अञ्जनशब्दको विशेषण भएको हुनाले नभ्यशब्द पनि नपुंसकलिङ्गी भयो । प्रयोग- नभ्यमञ्जनम् (रथको नाभिलाई हित गर्ने तेल आदि) तेलआदि नाभिमा राख्नाले चक्काजाम हुँदैन । शरीरको अवयव वाचक नाभि शब्दका स्थानमा नभ आदेश हुँदैन । किन कि यो गवादिगण भित्रको नाभि शब्द हुनाले त्यहाँ शरीरावयव नाभि शब्दमा "नाभि नभं च" यो वार्तिक लाग्दैन ।

**तस्मै इति-** चतुर्थ्यन्त समर्थदेखि हितम् यस अर्थमा छ प्रत्यय होस् ।

---

१५१ प्राक्क्रीतीयेष्वर्थेषु इति काशिका ।

वत्सेभ्यो हितो वत्सीयो गोधुक् ॥

**११३५. शरीरावयवाद्यत् ५।१।६॥**

दन्त्यम् । कण्ठ्यम् । नस्यम् ॥

**११३६. आत्मन्विश्वजनभोगोत्तरपदात्खः ५।१।९॥**

**११३७. आत्माध्वानौ खे ६।४।१६९॥**

एतौ खे प्रकृत्या स्तः । आत्मने हितम् आत्मनीनम् । विश्वजनीनम् । मातृभोगीणः ॥

**इति छ्यतोरवधिः (प्राक्क्रीतीयाः समाप्ताः) ॥९॥**

---

**वत्सीयः**- वत्सेभ्यो हितः (बाच्छाहरूलाई हित) यस अर्थमा 'वत्स+भ्यस्'देखि "तस्मै हितम्"ले छ प्रत्यय, छका स्थानमा ईय् आदेश, विभक्तिलुक्, अकारलोप भयो, 'वत्सीय'शब्द बन्यो, त्यसदेखि सु आयो, 'वत्सीयः'सिद्ध भयो । प्रयोग– वत्सीयो गोधुक् (बाच्छालाई हित गर्ने गोठालो)

**शरीरावयवादिति**- शरीरको अवयववाचक शब्द प्रकृतिक चतुर्थ्यन्त समर्थदेखि 'हितम्' यो अर्थमा यत् प्रत्यय होस् । यो पनि छ प्रत्ययको अपवाद हो ।

**दन्त्यम्**- दन्तेभ्यो हितम् (दाँत लाई हित) यस विग्रहमा 'दन्त+भ्यस्'देखि "शरीरावयवात्०"ले यत् प्रत्यय, विभक्तिलुक्, अकारको लोप भयो, 'दन्त्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'दन्त्यम्' सिद्ध भयो । प्रयोग–दन्त्यमौषधम् (दाँतलाई हित गर्ने औषधि)

**कण्ठ्यम्**- कण्ठाय हितम् (घाँटीलाई हित गर्ने) यस विग्रहमा 'कण्ठ+ङे'देखि उक्त सूत्रले यत् प्रत्यय, विभक्तिलुक्, आदि सबै कार्य पूर्ववत् भयो, 'कण्ठ्यम्' सिद्ध भयो ।

**नस्यम् (नस)**- नासिकायै हितम् (नाकलाई हित गर्ने) यस विग्रहमा 'नासिका+ङे'देखि उक्त सूत्रले यत् प्रत्यय, विभक्तिलुक्, "पद्दन्नोमास्०"ले नासिकाका स्थानमा नस् आदेश भयो, 'नस्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'नस्यम्' सिद्ध भयो ।

**आत्मन्निति**- आत्मन् शब्द, विश्वजन शब्द र भोग शब्द उत्तरपद हुने शब्दप्रकृतिक चतुर्थ्यन्त समर्थदेखि हितम् यस अर्थमा ख प्रत्यय होस् । यो पनि छप्रत्ययको अपवाद हो ।

**आत्माध्वानाविति**- ख प्रत्यय पर भएमा आत्मन् शब्द र अध्वन् शब्द प्रकृतिभावले रहून् ।

**आत्मनीनम्**- आत्मने हितम् (आफूलाई हित) यस विग्रहमा 'आत्मन्+ङे'देखि "प्राक्क्रीताच्छः"लाई बाधेर "आत्मन्विश्व०"ले ख प्रत्यय भयो, खकारका स्थानमा ईन् आदेश भयो, 'आत्मन्+ईन' भयो, "नस्तद्धिते"ले टिलोप पाएकोमा "आत्माध्वानौ खे"ले प्रकृतिभाव भयो, 'आत्मनीन'शब्द बन्यो, त्यसदेखि सु आयो, 'आत्मनीनम्' सिद्ध भयो

**विश्वजनीनम्**- विश्वे च ते जनाः (सम्पूर्ण मानिस) यस विग्रहमा कर्मधारयसमास भएर 'विश्वजन' शब्द बन्यो, विश्वजनेभ्यो हितम् (सबै मान्छेलाई हित) यस विग्रहमा 'विश्वजन+भ्यस्'देखि उक्त सूत्रले ख प्रत्यय, ईन् आदेश, विभक्तिलुक्, अकारलोप भयो, 'विश्वजनीन'शब्द बन्यो, त्यसदेखि सु आयो, 'विश्वजनीनम्' सिद्ध भयो । प्रयोग– वेदवाक्यं विश्वजनीनं भवति (वेदको वाक्य सबैमान्छेलाई हित गर्ने हुन्छ ।)

**मातृभोगीणः**- मातृभोगाय हितम् (आमाको शरीरलाई हितकर) यस विग्रहमा 'मातृभोग+ङे'देखि उक्त सूत्रले ख प्रत्यय, खकारका स्थानमा ईन् आदेश, विभक्तिलुक्, अकारलोप भयो, 'मातृभोगीन' भयो, नकारका स्थानमा "कुमति च"ले णत्व भयो, 'मातृभोगीण'शब्द बन्यो, त्यसदेखि सु आयो, 'मातृभोगीणः' सिद्ध भयो । यहाँ भोग शब्द शरीर वाचक छ ।

**छ प्रत्यय र यत् प्रत्ययको अवधि पूरा भयो ।**
**प्राक्क्रीतीय प्रत्ययको प्रकरण समाप्त भयो ।**

---

## अथ ठञधिकारप्रकरणम्

**११३८. प्रागवतेष्ठञ् ५।१।१८॥**

तेन तुल्यमिति वतिं वक्ष्यति, ततः प्राक् ठञधिक्रियते ॥

**११३९. तेन क्रीतम् ५।१।३७॥**

सप्तत्या क्रीतं साप्ततिकम् । प्रास्थिकम् ।

**११४०. सर्वभूमिपृथिवीभ्यामणञौ ५।१।४१॥**

**११४१. तस्येश्वरः ५।१।४२॥**

सर्वभूमिपृथिवीभ्यामणञौ स्तः । "अनुशतिकादीनां च" । सर्वभूमेरीश्वरः सार्वभौमः । पार्थिवः ॥

---

**अब ठञ्प्रत्ययको अधिकारको प्रकरण प्रारम्भ गरिन्छ ।**

**प्रागवतेरिति-** "तेन तुल्यं क्रिया चेद् वतिः" यो सूत्रदेखि पूर्वसम्म ठञ्को अधिकार गरिन्छ ।

**तेनेति-** तृतीयान्तसमर्थदेखि 'क्रीतम्' यस अर्थमा ठञ् प्रत्यय होस् ।

**साप्ततिकम्-** सप्तत्या क्रीतम् (सत्तरी रूपैञाँले किनेको) यस विग्रहमा 'सप्तति+टा'देखि "तेन क्रीतम्"ले ठञ्प्रत्यय, ठका स्थानमा इक, आदिवृद्धि, सप्ततिका इकारको लोप भयो, 'साप्ततिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'साप्ततिकम्' सिद्ध भयो । यहाँ ठञ्का ञकारको इत्संज्ञा भएको हुनाले इक यो ञित् प्रत्यय पर छ र आदिवृद्धि हुन्छ ।

**प्रास्थिकम्-** प्रस्थेन क्रीतम् (एक पाथीले किनेको) यस विग्रहमा 'प्रस्थ+टा'देखि "तेन क्रीतम्"ले ठञ् प्रत्यय, ठकारका स्थानमा इक, आदिवृद्धि, अकारको लोप भयो, 'प्रास्थिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'प्रास्थिकम्' सिद्ध भयो । यसको प्रयोग- प्रास्थिकं शूर्पम् ( एक पाथी अन्न दिएर किनेको सुपो)

**तस्येति-** सर्वभूमिशब्द र पृथ्वीशब्दप्रकृतिक षष्ठचन्तसमर्थदेखि 'ईश्वरः' यस अर्थमा क्रमैले अण् प्रत्यय र अञ् प्रत्यय होऊन् । यो सूत्रमा "सर्वभूमिपृथिवीभ्यामणञौ" यो सूत्रको अनुवृत्ति आउँछ ।

(**अनुशतिकेति-** १०९३ "अनुशतिकादीनां च"ले दुवैपदको आदि अच्को वृद्धि हुन्छ )

**सार्वभौमः-** सर्वभूमेरीश्वरः (सम्पूर्ण पृथ्वीका मालिक) यस विग्रहमा 'सर्वभूमि+ङस्'देखि "तस्येश्वरः"ले अण् प्रत्यय, विभक्तिलुक्, "अनुशतिकादीनां च"ले दुवै पदको आदि अच् सको अकार र भूको ऊकारका स्थानमा वृद्धि हुँदा 'सार्वभौमि+अ'भयो, इकारको "यस्येति च"ले लोप भयो, 'सार्वभौमः' शब्द बन्यो, त्यसदेखि सु आयो, 'सार्वभौमः' सिद्ध भयो ।

**पार्थिवः-** पृथिव्या ईश्वरः (पृथ्वीको मालिक) यस विग्रहमा 'पृथ्वी+ङस्'देखि "तस्येश्वरः"ले अञ्प्रत्यय भयो, आदिवृद्धि हुँदा आर्वृद्धि भयो, ईकारको लोप भयो, 'पार्थिव' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पार्थिवः' सिद्ध भयो ।

---

**११४२. पङ्क्तिविंशतित्रिंशच्चत्वारिंशत्पञ्चाशत्षष्टिसप्तत्यशीतिनवतिशतम् ५।१।५९॥**
एते रूढिशब्दा निपात्यन्ते ॥

---

अञ् र अण् प्रत्ययमा स्वर भेद हुन्छ । अञ् प्रत्ययान्त शब्द आद्युदात्त अणप्रत्यय उदात्त हुन्छ ।

**पङ्क्ति विशतीति**- पङ्क्ति, विंशति, त्रिंशत्, चत्वारिंशत्, पञ्चाशत्, षष्टि, सप्तति, अशीति, नवति, शतम्, यी रूढी शब्दहरू नियातन गरिन्छन् । पङ्क्ति (दश अक्षर भएको छन्द, अथवा दशसंख्या) विंशति (बीस) त्रिंशत् (तीस) चत्वारिंशत् (चालीस) पञ्चाशत् (पचास) षष्टि (साठी) सप्तति (सत्तरी) अशीति (असी) नवति (नब्बे) शतम् (सय) ।

[१५०] **पङ्क्तिः**- "तदस्य परिमाणम्" यो सूत्रको अधिकारमा पङ्क्तिः (पञ्च पादाः) परिमाणमस्य यस्य (पाँचओटा पाउछन् परिमाण जस्का) यस विग्रहमा "पङ्क्तिविंशति०" यो सूत्रले निपातनात् 'पञ्चन्+जस्'देखि ति प्रत्यय भयो, विभक्तिलुक्, टिलोप, "चोः कुः"ले कुत्व भयो । ञकारको नाश भएर नकार, नकारको अनुस्वार परसवर्ण भयो । 'पङ्क्ति'शब्द बन्यो, त्यसदेखि सु आयो, 'पङ्क्तिः' सिद्ध भयो । पाँच पाउ भएको पङ्क्तिछन्द वेदमा प्रसिद्ध छ । विंशति आदि शब्द दशत् शब्ददेखि बन्दछन्, दशको समूहलाई दशत् भनिन्छ । दशत्शब्द 'पञ्चद्दशतौ वर्गे वा ५ । १ । ६० यो सूत्रले निपातन गरेर बन्दछ ।

**विंशतिः**- द्वौ दशतौ परिमाणमस्य सङ्घस्य (दुई दश छन् परिमाण यस सङ्घका) यस विग्रहमा 'द्विदशत्+औ'देखि उक्त सूत्रले निपातनात् शति प्रत्यय भयो, प्रकृतिका स्थानमा विन् आदेश भयो, नकारको स्थानमा अनुस्वार भयो, 'विंशति' शब्द बन्यो, त्यसदेखि सु आयो, 'विंशतिः' सिद्ध भयो । विंशति आदि शब्द स्त्रीलिङ्गमा एकवचनान्त हुन्छन् । जस्तै- विंशतिः पुरुषाः (बीस मानिस) ।

**त्रिंशत्**- त्रयो दशतः परिमाणस्य (तीन दश छन् परिमाण यस समूहका) यस विग्रहमा 'त्रिदशत्+जस्'देखि प्रकृत सूत्रले निपातनात् शत् प्रत्यय भयो, प्रकृतिका स्थानमा त्रिन् आदेश भयो, पूर्ववत् 'त्रिंशत्' शब्द बन्यो, त्यसदेखि सु आयो, 'त्रिंशत्' सिद्ध भयो ।

**चत्वारिंशत्**- चत्वारो दशतः परिमाणमस्य सङ्घस्य (चार दश छन् परिमाण यसका) यस अर्थमा 'चतुर्दशत्+जस्'देखि उक्त सूत्रले पूर्ववत् शत् प्रत्यय र प्रकृतिका चतुर्दशत् का स्थानमा चत्वारिन् आदेश आदि प्रक्रिया भयो, 'चत्वारिंशत्' सिद्ध भयो ।

**पञ्चाशत्**- पञ्चदशतः परिमाणमस्य (पाँच दश छन् परिमाण यसका) यस विग्रहमा 'पञ्चदशत्+जस्'देखि उक्त सूत्रले निपातनात् शत् प्रत्यय प्रकृतिका स्थानमा 'पञ्चाआदेश' प्रक्रिया पूर्ववत् भयो, 'पञ्चाशत्' सिद्ध भयो ।

**षष्टिः**- षड् दशतः परिमाणमस्य सङ्घस्य (छवटा दश छन् परिमाण यस समूहका) यस विग्रहमा उक्त सूत्रले 'षड्दशत्+जस्'देखि ति प्रत्यय र प्रकृतिका स्थानमा षष् आदेश निपातन भयो, विभक्तिलुक् आदि प्रक्रिया भएर 'षष्टिः' सिद्ध भयो ।

**सप्ततिः**- सप्त दशतः परिमाणमस्य सङ्घस्य (सातवटा दश छन् परिमाण यस समूहका) यस विग्रहमा, 'सप्तदशत्+जस्'देखि तिप्रत्यय र प्रकृतिका स्थानमा सप्त आदेश निपातन भयो अरू प्रक्रिया पूर्ववत् भएर 'सप्ततिः' सिद्ध भयो ।

**अशीतिः**- अष्टौ दशतः परिमाणमस्य सङ्घस्य (आठवटा दश छन् परिमाण यस समूहका) यस विग्रहमा उक्त सूत्रले 'अष्टदशत्+जस्'देखि ति प्रत्यय र प्रकृतिका स्थानमा अशी आदेश निपातन भयो, विभक्तिलुक् आदि प्रक्रिया भएर 'अशीतिः' सिद्ध भयो ।

---

१५० द्वौ पञ्चतौ परिमाणमस्य यस विग्रहमा द्विपञ्चत् शब्ददेखि क्ति प्रत्यय गरेर प्रकृतिका स्थानमा पञ्च् आदेश द्विशब्दको लोप गर्दा पनि 'पङ्क्ति'शब्द बन्दछ ।

**११४३. तदर्हति ५।१।६३॥**

लब्धुं योग्यो भवतीत्यर्थे द्वितीयान्ताट्ठञादयः स्युः । श्वेतच्छत्रमर्हति श्वैतच्छत्रिकः ॥

**११४४. दण्डादिभ्यो यत् ५।१।६६॥**

एभ्यो यत् स्यात् । दण्डमर्हति दण्ड्यः । अर्घ्यः । वध्यः ॥

**११४५. तेन निर्वृत्तम् ५।१।७९॥**

अह्ना निर्वृत्तम् आह्निकम् ॥

**इति ठञोऽवधिः (प्राग्वतीयाः) ॥१०॥**

---

**नवतिः**– नव दशतः परिमाणमस्य सङ्घस्य (नौवटा दश छन् परिमाण यस समूहका) यस विग्रहमा उक्त सूत्रले 'नवदशत्+जस्'देखि तिप्रत्यय र प्रकृति नवदशत्को स्थानमा नव आदेश निपातन भयो, विभक्तिलुक् आदि प्रक्रिया भएर 'नवतिः' सिद्ध भयो ।

**शतम्**– दश दशतः परिमाणमस्य सङ्घस्य (दश ओटा दश छन् परिमाण यस समूहका) यस विग्रहमा उक्त सूत्रले 'दशदशत्+जस्'देखि त प्रत्यय भयो, प्रकृतिका स्थानमा श आदेश निपातन भयो, विभक्तिलुक् आदि प्रक्रिया भएर 'शतम्' सिद्ध भयो । यी शब्दहरूको यो साधन प्रक्रिया काशिकावृत्तिमा विवरण गरेको छ ।

**तदिति**– 'पाउन योग्य हुन्छ', यो अर्थमा द्वितीयान्तसमर्थदेखि ठञ् आदि प्रत्यय होऊन् ।

**श्वैतच्छत्रिकः**– श्वेतच्छत्रमर्हति (सेतो छाता पाउन योग्य छ) यस विग्रहमा 'श्वेतच्छत्र+अम्'देखि "तदर्हति" यो सूत्रले ठञ्प्रत्यय भयो, ठका स्थानमा इक आदेश भयो, आदिवृद्धि, अकारको लोप भयो, 'श्वैतच्छत्रिक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'श्वैतच्छत्रिकः' सिद्ध भयो ।

**दण्डादिभ्य इति**– दण्ड आदि शब्दप्रकृतिक द्वितीयान्तसमर्थदेखि यत्प्रत्यय होस्, अर्हति (पाउन योग्य छ) यो अर्थमा ।

**दण्ड्यः**– दण्डमर्हति (दण्ड पाउन योग्य छ) यस विग्रहमा 'दण्ड+अम्'देखि "दण्डादिभ्यो यत्"ले यत् प्रत्यय भयो, विभक्तिलुक्, अकारको लोप भयो, 'दण्ड्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'दण्ड्यः' सिद्ध भयो ।

**अर्घ्यः**– अर्घम् अर्हति (मूल्य अथवा पूजाविधि पाउन योग्य छ) यस अर्थमा 'अर्घ+अम्'देखि "दण्डादिभ्यो यत्"ले यत् प्रत्यय, विभक्तिलुक्, अकारको लोप भयो, 'अर्घ्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अर्घ्यः' सिद्ध भयो ।

**वध्यः**– वधम् अर्हति (वध पाउन योग्य छ) यस अर्थमा 'वध+अम्'देखि "दण्डादिभ्यो यत्"ले यत् प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भयो, 'वध्य' शब्द बन्यो, त्यसदेखि सु आयो, 'वध्यः' सिद्ध भयो ।

**तेनेति**– तृतीयान्तसमर्थदेखि निर्वृत्तम् (सम्पन्न गरिएको) यस अर्थमा ठञ् प्रत्यय होस् ।

**आह्निकम्**- अह्ना निर्वृत्तम् (एक दिनले संपन्न गरिएको) यस विग्रहमा 'अहन्+टा' यो तृतीयान्तसमर्थदेखि "तेन निर्वृत्तम्"ले ठञ् प्रत्यय, ठका स्थानमा इक आदेश भयो, 'अहन्+इक' यहाँ "नस्तद्धिते"ले टिलोप पाएमा "अह्नष्टखोरेव"ले निषेध भयो, "अल्लोपोऽनः"ले उपधाको लोप भयो, 'अह्न्+इक' भयो, आदिवृद्धि भयो, 'आह्निक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'आह्निकम्' सिद्ध भयो ।

**ठञ् प्रत्ययको अवधि सकियो ।**

----------------

## अथ त्वतलोरधिकारः

**११४६. तेन तुल्यं क्रिया चेद्वतिः ५।१।११५॥**

ब्राह्मणेन तुल्यं ब्राह्मणवत् अधीते । क्रिया चेदिति किम् ? गुणतुल्ये मा भूत् । पुत्रेण तुल्यः स्थूलः ॥

**११४७. तत्र तस्येव ५।१।११६॥**

मथुरायामिव मथुरावत् स्रुघ्ने प्राकारः । चैत्रस्येव चैत्रवन्मैत्रस्य गावः ॥

**११४८. तस्य भावस्त्वतलौ ५।१।११९॥**

प्रकृतिजन्यबोधे प्रकारो भावः ।

---

**अब भावकर्मार्थ शुरू हुन्छ ।**

**तेनेति–** तृतीयान्त समर्थदेखि तुल्यक्रिया बुझिँदामा वति प्रत्यय होस् ।

**ब्राह्मणवदधीते–** ब्राह्मणेन तुल्यम् अधीते (बाहुनले जस्तै पढ्छ) यस विग्रहमा 'ब्राह्मण+टा' यो तृतीयान्तदेखि अधीते यो अध्ययनक्रिया तुल्य बुझिएकोले "तेन तुल्यं क्रिया चेद् वतिः"ले वति प्रत्यय भयो, वतिका इकारको अनुबन्ध लोप, विभक्तिलुक् भयो, 'ब्राह्मणवत्' शब्द बन्यो, वतिप्रत्ययान्त शब्द अव्यय हुने हुनाले सु आयो, "अव्ययादाप्सुपः"ले लुक् भयो, ब्राह्मणवत्' सिद्ध भयो । 'ब्राह्मणवदधीते' यहाँ तकारको जश्त्व भएर दकार भएको छ ।

**क्रिया चेदिति किम् ?–** तुल्यक्रिया छ भने यो किन भन्नु ? न भन्ने हो भने 'पुत्रेण तुल्यः स्थूलः' (छोराजस्तै मोटो) यहाँ तुल्य क्रिया छैन, स्थूलगुणले तुल्य छ, यहाँ पनि वति होला, सो नहोस् भनेर तुल्य क्रिया बुझिँदामा भनिएको हो ।

**तत्र तस्येति–** सप्तम्यन्त समर्थ र षष्ठ्यन्त समर्थदेखि इव यस अर्थमा अर्थात् तुल्य अर्थ बुझिँदामा वति प्रत्यय होस् ।

**मथुरावत्–** मथुरायाम् इव (मथुरामा जस्तै) भन्ने विग्रहमा 'मथुरा+ङि' यो सप्तम्यन्त समर्थदेखि "तत्र तस्येव"ले वतिप्रत्यय, विभक्तिलुक् भयो, 'मथुरावत्' शब्द बन्यो, त्यसदेखि सु आयो, "अव्ययादाप्सुपः"ले लुक् भयो, 'मथुरावत्' सिद्ध भयो ।

यसको प्रयोग- मथुरावत् स्रुघ्ने प्राकारः (मथुराको जस्तो स्रुघ्न देशको पर्खाल ।)

**तस्य भाव इति–** षष्ठ्यन्त समर्थदेखि भाव अर्थमा त्व र तल्प्रत्यय होऊन् ।

प्रकृतिजन्य ज्ञानमा हुने प्रकार (विशेषण) लाई भाव भनिन्छ । जसदेखि प्रत्यय गरिन्छ त्यो प्रकृति हो । जस्तै गो शब्ददेखि प्रत्यय गरिन्छ भने गो प्रकृति भयो । तज्जन्य 'गो'पदार्थ (गाई)को ज्ञानमा प्रकार गोत्व छ । अर्थात् गोत्वविशिष्ट व्यक्तिको ज्ञान गोत्वप्रकारको ज्ञानपूर्वक हुन्छ । त्यही अर्थमा त्व प्रत्यय र तल् प्रत्यय हुन्छन् । अथवा काशिकावृत्तिमा भाव शब्दको अर्थ यस्तो

(लि.सू.) त्वान्तं क्लीबम् । (लि.सू.) तलन्तं स्त्रियाम् । गोर्भावो गोत्वम् । गोता ॥

**११४९. आ च त्वात् ५।१।१२०॥**

ब्रह्मणस्त्व इत्यतः प्राक् त्वतलावधिक्रियेते । अपवादैः सह समावेशार्थमिदम् । चकारो नञ्स्नञ्भ्यामपि समावेशार्थः । स्त्रिया भावः- स्त्रीत्वम् । स्त्रीता । पौंस्नम् । पुंस्त्वम् । पुंस्ता ॥

**११५०. पृथ्वादिभ्य इमनिज्वा ५।१।१२२॥**

वावचनमणादिसमावेशार्थम् ॥

---

गरेको छ । "भवतोऽस्मादभिधानप्रत्ययौ" इति भावः । शब्दस्य प्रवृत्तिनिमित्तं भावशब्देनोच्यते" (जसबाट संज्ञा र प्रत्यय हुन्छन्, त्यही भाव हो । अथवा शब्दको प्रवृत्तिनिमित्त नै भाव हो ।

(लि.सू.) त्वान्तमिति- त्व प्रत्ययान्त शब्द नपुंसकलिङ्गी हुन्छ ।

(लि.सू.) तलन्तमिति- तल् प्रत्यान्तशब्द स्त्रीलिङ्गी हुन्छ ।

**गोत्वम्**- गोर्भावः (गाईको भाव) यस अर्थमा 'गो+ङस्'देखि "तस्य भावस्त्वतलौ"ले त्वप्रत्यय भयो, विभक्तिलुक् भयो, 'गोत्व' शब्द बन्यो, सु आयो, "त्वान्तं क्लीबम्" यो लिङ्गानुशासन सूत्र अनुसार गोत्वशब्द नपुंसकलिङ्गी हुनाले सुका स्थानमा अम् भयो, 'गोत्वम्' सिद्ध भयो ।

**गोता**- गोर्भावः (गाईको भाव) यस विग्रहमा 'गो+ङस्'देखि पूर्वसूत्रले तल् प्रत्यय भयो विभक्तिलुक् भयो, 'गोत' भयो, तलन्तशब्दको स्त्रीत्व हुनाले गोत शब्ददेखि टाप् प्रत्यय भयो, 'गोता' शब्द बन्यो, त्यसदेखि सु आयो, लुक् भयो, 'गोता' सिद्ध भयो ।

**आचेति**- "ब्रह्मणस्त्वः" यो सूत्रदेखि पूर्वसम्म त्व प्रत्यय र तल् प्रत्ययको अधिकार गरिन्छ ।

**अपवादैः सहेति**- अपवाद प्रत्ययहरूका साथ त्व प्रत्यय र तल् प्रत्ययको समावेश गर्न यो सूत्र पढेको हो । पुनश्च चकार पढेको नञ् प्रत्यय र स्नञ् प्रत्ययको समावेशका निमित्त हो । इमनिच् आदि प्रत्यय त्वप्रत्यय र तल् प्रत्ययका अपवाद हुन् । नञ् प्रत्यय र स्नञ् प्रत्यय पनि अपवाद नै हुन् "स्त्रीपुंसाभ्यां नञ्स्नञौ०"को अधिकार पाँचौ अध्यायको पहिलो पाउको समाप्ति सम्म रहन्छ । भाव अर्थमा अरू प्रत्ययको साथ साथै त्व प्रत्यय र तल् प्रत्यय पनि हुन्छन् भन्ने यो भनाइको आशय हो ।

**स्त्रैणम्, स्त्रीत्वम्, स्त्रीता**- स्त्रिया भाव (स्त्रीको भाव) यस विग्रहमा 'स्त्री+ङस्'देखि "तस्य भावस्त्वतलौ"लाई बाधेर "स्त्रीपुंसभ्यां नञ्स्नञौ"ले नञ् प्रत्यय भयो, विभक्तिलुक्, आदिवृद्धि भयो, 'स्त्रैण' शब्द बन्यो, त्यसदेखि सु आयो, भाव हुनाले नपुंसकत्वात् सु का स्थापनमा अम् भयो, 'स्त्रैणम्' सिद्ध भयो । नञ् प्रत्यय नभएको पक्षमा "तस्य भावस्त्वलौ"ले त्व, तल्, दुवै प्रत्यय भएर सु ल्याएपछि 'स्त्रीत्वम्', 'स्त्रीता' यी दुई रूपसमेत तीन रूप सिद्ध भए ।

**पौंस्नम् पुंस्त्वम् पुंस्ता**- पुंसो भाव (पुरुषको भाव) यस अर्थमा 'पुम्स्'+ङस्'देखि "स्त्रीपुंसाभ्यां०"ले स्नञ्प्रत्यय, विभक्तिलुक् आदि कार्य भयो, 'पौंस्नम्' सिद्ध भयो । त्व प्रत्यय भयो, विभक्तिलुक् आदि कार्य भयो, 'पुंस्त्वम्' सिद्ध भयो, तल् प्रत्यय भयो, पूर्ववत् सबै प्रक्रिया भएर 'पुंस्ता' सिद्ध भयो । यसरी तीन रूप सिद्ध भए ।

**पृथ्वादिभ्य इति**- पृथुआदि शब्दप्रकृतिक षष्ठ्यन्त समर्थदेखि भाव अर्थमा इमनिच् प्रत्यय विकल्पले होस् । इच्को इत्संज्ञा, लोप हुन्छ, इमन् बाँकी रहन्छ ।

**वा वचनमिति**- वा ग्रहण गरेको अण्आदि प्रत्ययको समावेशका निमित्त हो । पृथु मृदु आदि शब्दमा "इगन्ताच्च लघुपूर्वात्"ले गरिने अण् प्रत्ययको चण्ड, खण्ड, आदि गुणवाचक शब्दमा

**११५१. र ऋतो हलादेर्लघोः ६।४।१६१॥**

हलादेर्लघोर्ऋकारस्य रः स्यादिष्ठेमेयस्सु परतः । पृथुमृदुभृशकृशदृढपरिवृढानामेव रत्वम् ॥

**११५२. टेः ६।४।१५५॥**

भस्य टेर्लोप इष्ठेमेयस्सु । पृथोर्भावः प्रथिमा ॥

**११५३. इगन्ताच्च लघुपूर्वात् ५।१।१३१॥**

इगन्ताल्लघुपूर्वात् प्रातिपदिकाद्भावेऽण् प्रत्ययः । पार्थवम् । म्रदिमा, मार्दवम् ॥

**११५४. वर्णदृढादिभ्यः ष्यञ्च ५।१।१२३॥**

चादिमनिच् । शौक्ल्यम् । शुक्लिमा ।

---

"गुणवचनब्राह्मणादिभ्यो०"ले गर्ने ष्यञ् प्रत्ययको र बाल, वत्स, आदि शब्दमा अञ् प्रत्ययको समावेशका निमित्त वा ग्रहण गरेको हो । यी प्रत्यय भावकर्मप्रक्रियामा 'अष्टाध्यायीसूत्रपाठ'मा पछि बताइन्छन् । लघुकौमुदीमा ष्यञ् प्रत्यय गर्ने सूत्र पछि आउँछ, अरू प्रत्यय गर्ने सूत्र छैनन् ।

**र ऋत इति–** हलादिमा हुने लघुसंज्ञक ऋकारका स्थानमा रेफ आदेश होस्, 'इष्ठन्, इमनिच्, ईयसुन् प्रत्यय पर भएमा ।

**टेः–** भसंज्ञक टिको लोप होस्, इष्ठन्, इमनिच्, ईयसुन प्रत्यय पर भएमा ।

**(वा) पृथुमृदु इति–** पृथु, मृदु, भृश, दृढ, परिवृढ, यी शब्दका ऋकारका स्थानमा मात्र रेफआदेश हुन्छ ।

**प्रथिमा/पार्थवम्/पृथुत्वम्/पृथुता–** पृथोर्भावः (विशालको भाव) यस विग्रहमा 'पृथु+ङस्' यो षष्ठ्यन्तदेखि "पृथ्वादिभ्य इमनिज्वा"ले इमनिच् प्रत्यय भयो, 'पृथु+इमन्' भयो, "र ऋतो०" यस सूत्रले "पृथुमृदुभृश०" यो वार्तिकको सहकारपूर्वक ऋकारका स्थानमा रेफ आदेश भयो, यण् भयो, 'प्रथु+इमन्' भयो, "टेः"ले टिलोप भयो, 'प्रथिमन्'शब्द बन्यो, प्रथिमन् शब्ददेखि सु आयो, 'प्रथिमा' सिद्ध भयो । इमनिच् प्रत्यय नभएको पक्षमा "इगन्ताच्च लघुपूर्वात्"ले अण् प्रत्यय, विभक्तिलुक् भयो, 'पृथु+अ' यहाँ आदिवृद्धि, "ओर्गुणः"ले गुण, अवादेश भयो, 'पार्थव'शब्द बन्यो, त्यसदेखि सु आयो नपुसंकत्वात् अम् भयो, 'पार्थवम्' सिद्ध भयो । एक पक्षमा त्व र तल् प्रत्यय पनि भएर, पूर्ववत् सबै पक्रिया भएपछि 'पृथुत्वम्' 'पृथुता' यी दुई रूप पनि सिद्ध भए ।

**म्रदिमा मार्दवम्/मृदुत्वम्/मृदुता–** मृदोर्भावः (कोमलको भाव) यस विग्रहमा 'मृदु+ङस्'देखि "पृथ्वादिभ्यः०"ले इमनिच् प्रत्यय, विभक्तिलुक् "र ऋतो"ले रेफ आदेश भयो, 'म्रदु+इमन्', टिलोप भयो, 'म्रदिमन्'शब्द बन्यो, त्यसदेखि सु आयो, 'म्रदिमा' सिद्ध भयो । इमनिच् नभएको पक्षमा पूर्ववत्, अण्, विभक्तिलुक्, आदिवृद्धि, गुण, अव् आदेश भयो, 'मार्दव'शब्द बन्यो, त्यसदेखि सु आयो। 'मार्दवम्' सिद्ध भयो । "आ च त्वात्"ले त्व र तल् प्रत्ययको समावेश गरेकोले त्व प्रत्यय र तल् प्रत्यय भए, पूर्ववत् सबै कार्य भयो, 'मृदुत्वम्', 'मृदुता' यी दुई रूप सिद्ध भए ।

**वर्णदृढादिभ्य इति–** वर्णवाचक शब्द र दृढादिशब्दप्रकृतिक षष्ठ्यन्त समर्थदेखि ष्यञ् प्रत्यय होस्, चकार पढ्नाले इमनिच् प्रत्यय पनि होस् ।

**शौक्ल्यम्/शुक्लिमा/शुक्लत्वम्/शुक्लता–** शुक्लस्य भाव (सेतोको भाव) यस विग्रहमा 'शुल्क+ङस्'देखि "वर्णदृढादिभ्यः०"ले ष्यञ् प्रत्यय षकारको "षः प्रत्ययस्य"ले ञकारको "हलन्त्यम्"ले इत्संज्ञा, लोप भयो, विभक्तिलुक्, आदिवृद्धि, अकारलोप भयो, 'शौक्ल्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'शौक्ल्यम्' सिद्ध भयो । इमनिच्भएको पक्षमा पूर्ववत् सबै प्रक्रिया भयो, 'शुक्लिमन्'शब्द

दार्ढ्यम् । द्रढिमा ॥

**११५५. गुणवचनब्राह्मणादिभ्यः कर्मणि च ५।१।१२४॥**

चाद्भावे । जडस्य भावः कर्म वा जाड्यम् । मूढस्य भावः कर्म वा मौढ्यम् । ब्राह्मण्यम् । आकृतिगणोऽयम् ॥

**११५६. सख्युर्यः ५।१।१२६॥**

सख्युर्भावः कर्म वा सख्यम् ॥

**११५७. कपिज्ञात्योर्ढक् ५।१।१२७॥**

कापेयम् ।

---

बन्यो, त्यसदेखि सु आयो, 'शुक्लिमा' सिद्ध भयो । एक पक्षमा त्व प्रत्यय र तल् प्रत्यय पनि भए । पूर्ववत् प्रक्रिया भयो, 'शुक्लत्वम्', 'शुक्लता' यी दुई रूप पनि सिद्ध भए ।

**दार्ढ्यम् द्रढिमा दृढत्वम् दृढता**– दृढस्य भावः (बलियोको भाव) यस विग्रहमा 'दृढ+ङस्'देखि पूर्वसूत्रले ष्यञ् प्रत्यय, विभक्तिलुक्, आदिवृद्धि हुँदा आर्वृद्धि, अकारको लोप भयो, 'दार्ढ्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'दार्ढ्यम्' सिद्ध भयो । इमनिच् भएको पक्षमा "र ऋतो"ले रत्व, अकारलोप भएर, 'द्रढिमन्'शब्द बन्यो, त्यसदेखि सु आयो, 'द्रढिमा' सिद्ध भयो । त्वप्रत्यय र तल् प्रत्यय भएमा पूर्ववत् प्रक्रिया भएर 'दृढत्वम्' 'दृढता' यी दुई रूप सिद्ध हुन्छन् ।

**गुणवचनेति**– गुणवाचक शब्द र ब्राह्मणादि शब्दप्रकृतिक षष्ठयन्त समर्थदेखि कर्मअर्थमा ष्यञ् प्रत्यय होस्, चकार पढनाले भावअर्थमा पनि होस् ।

**जाड्यम्**– जडस्य भावः कर्म वा (मूर्खको भाव अथवा काम) यस विग्रहमा 'जड+ङस्'देखि "गुणवचनब्राह्मणादिभ्यः०"ले ष्यञ् प्रत्यय भयो, विभक्तिलुक्, आदिवृद्धि, अकारलोप भयो, 'जाड्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'जाड्यम्' सिद्ध भयो । एक पक्षमा त्व प्रत्यय र तल् प्रत्यय भएर पूर्ववत् 'जडत्वम्', 'जडता' यी दुई रूप पनि हुन्छन् ।

**मौढ्यम्**– मूढस्य भावः कर्म वा (मुढाको भाव अथवा कर्म) यस विग्रहमा 'मूढ+ङस्'देखि "गुणवचनब्राह्मणादिभ्यः०"ले ष्यञ् प्रत्यय भयो, विभक्तिलुक्, आदिवृद्धि हुँदा मूका ऊकारका स्थानमा औकार भयो, अकारलोप भयो, 'मौढ्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'मौढ्यम्' सिद्ध भयो । एक पक्षमा त्व प्रत्यय र तल् प्रत्यय भएर पूर्ववत् 'मूढत्वम्', 'मूढता' यी दुई रूप पनि हुन्छन् ।

**ब्राह्मण्यम्**– ब्राह्मणस्य भावः कर्म वा (ब्राह्मणको भाव अथवा कर्म) यस विग्रहमा 'ब्राह्मण+ङस्'देखि "गुणवचनब्राह्मणादिभ्यः०"ले ष्यञ् प्रत्यय, विभक्तिलुक् भयो, 'ब्राह्मण+य' आदिवृद्धि, अकारलोप भयो, 'ब्राह्मण्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'ब्राह्मण्यम्' सिद्ध भयो । एक पक्षमा त्व प्रत्यय र तल् प्रत्यय भएर पूर्ववत् 'ब्राह्मणत्वम्', 'ब्राह्मणता' यी दुई रूप पनि हुन्छन् ।

**आकृतीति**– यो ब्राह्मणादि आकृतिगण हो ।

**सख्युरिति**– सखि शब्दप्रकृतिक षष्ठयन्त समर्थदेखि भाव र कर्म अर्थमा य प्रत्यय होस् ।

**सख्यम्**– सख्युर्भावः कर्म वा (सँगीको भाव अथवा कर्म) यस विग्रहमा 'सखि+ङस्'देखि य प्रत्यय, विभक्तिलुक्, इकारको लोप भयो, 'सख्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'सख्यम्' सिद्ध भयो ।

**कपिज्ञात्योरिति**– कपि शब्द र ज्ञाति शब्दप्रकृतिक षष्ठयन्त समर्थदेखि ढक् प्रत्यय होस्, भाव र कर्म अर्थमा ।

**कापेयम्**– कपेर्भावः कर्म वा (बाँदरको भाव अथवा काम) यस विग्रहमा 'कपि+ङस्'देखि

ज्ञातेयम् ॥

११५८. **पत्यन्तपुरोहितादिभ्यो यक् ५।१।१२८॥**

सैनापत्यम् । पौरोहित्यम् ॥

**इति त्वतलोरधिकारप्रकरणम् ॥११॥**

**भावकर्मार्थकप्रत्ययप्रकरणम् समाप्तम्**

---

"कपिज्ञात्योर्ढक्" यो सूत्रले ढक् प्रत्यय ढकारका स्थानमा एय् आदेश, विभक्तिलुक्, आदिवृद्धि, इकार लोप भयो, 'कापेय'शब्द बन्यो, त्यसदेखि सु आयो, 'कापेयम्' सिद्ध भयो ।

**ज्ञातेयम्**– ज्ञातेर्भावः कर्म वा (दाज्यू भाइहरूको भाव अथवा काम) यस विग्रहमा 'ज्ञाति+ङस्'देखि ढक् प्रत्यय भयो ढकारका स्थानमा एय् आदेश आदि प्रक्रिया पूर्ववत् भयो, 'ज्ञातेयम्' सिद्ध भयो ।

**पत्यन्तेति**– पतिशब्दान्त शब्द र पुरोहितादिगणपठित शब्दप्रकृतिक षष्ठचन्त समर्थदेखि यक् प्रत्यय होस्, भाव र कर्म अर्थमा ।

**सैनापत्यम्**– सेनापतेर्भावः कर्म वा (सेनापतिको भाव अथवा काम) यस विग्रहमा 'सेनापति+ङस्'देखि यो पतिशब्दान्त शब्द हुनाले "पत्यन्तपुरोहितादिभ्यः०"ले यक् प्रत्यय, विभक्तिलुक्, आदिवृद्धि, इकारको लोप भयो, 'सैनापत्य'शब्द बन्यो, त्यसदेखि सु आयो 'सैनापत्यम्' सिद्ध भयो ।

**पौरोहित्यम्**– पुरोहितस्य भावः कर्म वा (पुरोहितको भाव अथवा काम) यस विग्रहमा 'पुरोहित+ङस्'देखि "पत्यन्तपुरोहितादिभ्यो०"ले यक् प्रत्यय, विभक्तिलुक्, आदिवृद्धि, अकारको लोप भयो, 'पौरोहित्य'शब्द बन्यो, त्यसदेखि सु आयो, 'पौरोहित्यम्' सिद्ध भयो ।

'सखि'देखि लिएर 'पुरोहित'सम्मका शब्दको य, यकआदि विशेषप्रत्यय बाहेक त्व र तल् प्रत्यय भएर 'सखित्वम्', 'सखिता' आदि रूप पनि बन्दछन् भन्ने कुरा पनि स्मरण गर्नू ।

**त्व प्रत्यय र तल् प्रत्ययको अधिकार पूरा भयो ।**

**भावकर्मार्थक प्रकरण सकियो ।**

---

## अथ भवनाद्यर्थकाः

**११५९. धान्यानां भवने क्षेत्रे खञ् ५।२।१॥**

भवत्यस्मिन्निति भवनम् । मुद्गानां भवनं क्षेत्रं मौद्गीनम् ॥

**११६०. व्रीहिशाल्योर्ढक् ५।२।२॥**

व्रैहेयम् । शालेयम् ॥

---

**अब भवनाद्यर्थक प्रकरण आरम्भ गरिन्छ ।**

**धान्यानामिति–** धान्यविशेषवाचक शब्दप्रकृतिक षष्ठयन्त समर्थदेखि भवनम् क्षेत्रम् (हुने खेत) यो अर्थ बुझिदामा खञ् प्रत्यय होस् ।

यो भवनशब्द भू धातुदेखि भवति अस्मिन् (हुन्छ यहाँ) यो विग्रहमा अधिकरणमा घञ् प्रत्यय गरेर बन्दछ । अतः भवन शब्दको अर्थ हो, हुने ठाउँ । त्यो के त ? खेत । यसै कारण 'क्षेत्रम्' यो विशेषण छ । धान्य भन्नाले यहाँ विभिन्न धान्य (खाद्यवस्तु) लाई लिइन्छ, केवल धानलाई मात्र हैन । मुगी, माष आदिलाई शिम्बीधान्य, जौ, गहुँ आदिलाई शूकधान्य, अनि खास धानका पनि व्रीहि, शालि, कलम, आदि धेरै भेद छन्, ती सबैलाई धान्य भनिन्छ । धान्यविशेषवाचक षष्ठ्यन्तसमर्थबाट त्यही धान हुने खेत बुझिएमा खञ् प्रत्यय हुन्छ ।

**मौद्गीनम्–** मुद्गानां भवनं क्षेत्रम् (मुगीमाष हुने खेत) यस विग्रहमा 'मुद्ग+आम्'देखि "धान्यानां भवने०"ले खञ् प्रत्यय भयो, खकारका स्थानमा ईन्आदेश भयो, विभक्तिलुक् भयो, 'मुद्ग+ईन' भयो, आदिवृद्धि अकारको लोप भयो, 'मौद्गीन'शब्द बन्यो, त्यसदेखि सु आयो, 'मौद्गीनम्' सिद्ध भयो ।

**व्रीहिशाल्योरिति–** व्रीहि शब्द र शालि शब्दप्रकृतिक षष्ठयन्त समर्थदेखि भवनं क्षेत्रम् यो अर्थ बुझिँदामा ढक् प्रत्यय होस् । यो ढक् प्रत्यय खञ् प्रत्ययको अपवाद हो ।

**व्रैहेयम्–** व्रीहीणां भवनं क्षेत्रम् (व्रीहि धान हुने खेत) यस अर्थमा 'व्रीहि+आम्'देखि खञ् प्रत्ययलाई बाधेर यस सूत्रले ढक् प्रत्यय भयो, ढकारका स्थानमा एय् आदेश, विभक्तिलुक् भयो, 'व्रीहि+एय' भयो, आदिवृद्धि, इकारलोप भयो, 'व्रैहेय'शब्द बन्यो, त्यसदेखि सु आयो, 'व्रैहेयम्' सिद्ध भयो ।

**शालेयम्–** शालीनां भवनं क्षेत्रम् (शालिधान हुने खेत) यस विग्रहमा 'शालि+आम्'देखि पूर्ववत् ढक् प्रत्यय, एय् आदेश आदि प्रक्रिया पूर्ववत् भयो, 'शालेय'शब्द बन्यो, त्यसदेखि सु आयो, 'शालेयम्' सिद्ध भयो ।

यस प्रकारणमा लघुकौमुदीमा उल्लेख नगरिएका दुई सूत्र छन्, "यवयवकषष्टिकाद्यत्", "विभाषा तिलमाषोमाभङ्गाणुभ्यः" । यव, यवक, षष्टिक, यी शब्ददेखि भवनं क्षेत्रम् यो अर्थमा यत्

**११६१. हैयङ्गवीनं संज्ञायाम् ५।२।२३॥**

ह्योगोदोहशब्दस्य हियङ्गुरादेशः, विकारार्थे खञ्च निपात्यते । दुह्यते इति दोहः क्षीरम् । ह्योगोदोहस्य विकारः– हैयङ्गवीनं नवनीतम् ॥

**११६२. तदस्य सञ्जातं तारकादिभ्य इतच् ५।२।३६॥**

तारकाः सञ्जाता अस्य तारकितं नभः । पण्डितः । आकृतिगणोऽयम् ॥

**११६३. प्रमाणे द्वयसज्दघ्नञ्मात्रचः ५।२।३७॥**

तदस्येत्यनुवर्तते । ऊरू प्रमाणस्य–ऊरुद्वयसम् । ऊरुदघ्नम् । ऊरुमात्रम् ॥

**११६४. यत्तदेतेभ्यः परिमाणे वतुप् ५।२।३९॥**

---

प्रत्यय हुन्छ । तिल, माष, उमा, भङ्ग, अणु, यी शब्ददेखि उक्त अर्थमा यत् प्रत्यय र खञ् प्रत्यय दुवै हुन्छन् रूपहरू ऊह गर्नू ।

**हैयङ्गवीनमिति**– ह्योगोदोह शब्दप्रकृतिक षष्ठयन्त समर्थदेखि विकार अर्थमा खञ् प्रत्यय र ह्रेगोदोह शब्दका स्थानमा हियङ्गु आदेश निपातन होस् संज्ञा बुझिँदामा ।

**दुह्यत इति**– दुह्यते इति (दुहिन्छ) यस अर्थमा दोह भनेको दूध हो । गोर्दोह-गोदोहः (गाईको दूध) ह्यो गोदोहः (हिजोको गाईको दूध) ह्योगोदोहस्य विकारः (हिजोको गाईको दूधको विकार) यो विग्रहमा 'हैयङ्गवीन'शब्द बन्दछ, त्यसको अर्थ हो, हिजोको गाईको दूधको नौनी ।

**हेयङ्गवीनम्**– ह्योगोदोहस्य विकारः (हिजोको गाईका दूधको विकार, नौनी) यस विग्रहमा 'ह्योगोदोह+ङस्'देखि प्रकृत सूत्रले खञ् प्रत्यय र ह्योगोदोह शब्दका स्थानमा हियङ्गु आदेश, खकारको स्थानमा ईन् आदेश, विभक्तिलुक् भयो, 'हियङ्गु+ईन' भयो, आदिवृद्धि 'हैयङ्गु+इन' गुण, अव् आदेश भयो, 'हैयङ्गवीन'शब्द बन्यो, त्यसदेखि सु आयो, 'हैयङ्गवीनम्' सिद्ध भयो ।

**तदस्येति**– तारकादि शब्दप्रकृतिक प्रथमान्त समर्थदेखि 'अस्य सञ्जातम्' यस अर्थमा इतच् प्रत्यय होस् । चकारको इत्संज्ञा,लोप हुन्छ ।

**तारकितम्**– तारकाः सञ्जाता अस्य (ताराहरू पैदा भएका छन् यसका) यो विग्रहमा 'तारका+जस्'देखि "तदस्य सञ्जातम्०"ले इतच् प्रत्यय, विभक्तिलुक् भयो, 'तारका+इत' यहाँ आकारको "यस्येति च"ले लोप भयो, 'तारकित'शब्द बन्यो, त्यसदेखि सु आयो, 'तारकितम्' सिद्ध भयो । यसको प्रयोग तारकित नभः (तारा पैदा भएको आकाश)

**सदसदिति**– ठीक र बेठीकको विवेक गर्ने बुद्धिलाई पण्डा भनिन्छ ।

**पण्डितः**– पण्डा सञ्जाता अस्य (पण्डा बुद्धि पैदा भएको छ यसको) यो विग्रहमा 'पण्डा+सु'देखि प्रकृत सूत्रले इतच् प्रत्यय, विभक्तिलुक्, आकारको लोप भयो, 'पण्डित'शब्द बन्यो, त्यसदेखि सु आयो, 'पण्डितः' सिद्ध भयो । यस्तै प्रकारले- पुष्पित, फलित, पल्लवित, इत्यादि शब्दहरू सिद्ध हुन्छन् । यो तारकादिगण आकृतिगण हो ।

**प्रमाण इति**– प्रथमान्त समर्थदेखि "अस्य प्रमाणम्" यस अर्थमा द्वयसच्, दघ्नच् र मात्रच् प्रत्यय होऊन् ।

**ऊरूद्वयसम्**– ऊरू प्रमाणम् अस्य (तिघ्रा छन् प्रमाण यसका) यो विग्रहमा 'ऊरु+औ'देखि "प्रमाणे द्वयसच्०"ले द्वयसच् प्रत्यय भयो, चकारको इत्संज्ञा लोप भयो, विभक्तिलुक् भयो, 'ऊरुद्वयस'शब्द बन्यो, त्यसदेखि सु आयो, 'ऊरूद्वयसम्' सिद्ध भयो । यस्तै प्रकारले यही विग्रहमा ऊरुदघ्नम्, ऊरुमात्रम् यी रूप पनि बन्दछन् ।

**यत्तदेतेभ्य इति**– यद्, तद्, एतद् यी शब्दप्रकृतिक प्रथमान्त समर्थदेखि परिमाण अर्थमा वतुप् प्रत्यय होस् ।

---

यत्परिमाणमस्य यावान् । तावान् । एतावान् ।

**११६५. किमिदंभ्यां वो घः ५।२।४०॥**

आभ्यां वतुम् स्याद् वकारस्य घश्च ।

**११६६. इदंकिमोरीश्की ६।३।९०॥**

दृग्दृशवतुषु इदम ईश् किमः किः । कियान् । इयान् ॥

**११६७. सङ्ख्याया अवयवे तयप् ५।२।४२॥**

पञ्च अवयवा अस्य पञ्चतयम् ॥

---

**यावान्, तावान्, एतावान्**– यत्परिमाणमस्य (जो छ परिमाण यसको) यस विग्रहमा 'यद्+सु'देखि "यत्तदेतेभ्यः०"ले वतुप् प्रत्यय भयो, उप् यो अनुबन्धको लोप भयो, 'यद्+वत्' भयो, "आ सर्वनाम्नः"ले अन्त्य अल्का स्थानमा आकार आदेश भयो, 'य+आ+वत्' दीर्घ भयो, 'यावत्' शब्द बन्यो, त्यसदेखि सु आयो, "उगिदचां०"ले नुम्, "अत्वसन्तस्य०"ले दीर्घ आदि कार्य भयो, 'यावान्' सिद्ध भयो । यस्तै प्रकारले तत्परिमाणमस्य यस विग्रहमा 'तावान्' एतत्परिमाणमस्य यो विग्रहमा 'एतावान्' यी रूप पनि सिद्ध हुन्छन् ।

**किमिदमिति**– किम् शब्द र इदम्शब्द प्रकृतिक प्रथमान्त समर्थदेखि 'अस्य परिमाणम्' यस अर्थमा वतुप् प्रत्यय होस्, वतुप्का वकारका स्थानमा घकार आदेश पनि होस् ।

**इदंकिमोरिति**– दृग् शब्द, दृश शब्द र वतुप् प्रत्यय पर भएमा इदम् शब्दका स्थानमा ईश् आदेश र किम् शब्दका स्थानमा कि आदेश होस् ।

**इयान्**– इदम् परिमाणमस्य (यो छ परिमाण यसको) यस विग्रहमा "किमिदंभ्याम्"ले वतुप् प्रत्यय भयो, वकारका स्थानमा घ आदेश भयो, घकारका स्थानमा इय् आदेश भयो, 'इदम्+इयत्' भयो, "इदंकिमोरीश्की"ले इदम् का स्थानमा ईश् आदेश, शकारको इत्संज्ञा लोप शित्वात् सबैको स्थानमा इ भयो, विभक्तिलुक् भयो, 'ई+इयत्' यहाँ "यस्येति च"ले 'ई' को लोप भयो, 'इयत्'शब्द बन्यो, त्यसदेखि सु आयो, [१५१] 'इयान्' सिद्ध भयो । इयत् शब्दमा प्रकृति सबै लुप्त छ प्रत्ययमात्र बाँकी छ ।

**कियान्**– किं परिमाणमस्य (के परिमाण छ यसको) यस विग्रहमा किम् शब्ददेखि पूर्वसूत्रले वतुप् प्रत्यय वकारका स्थानमा घ आदेश, घकारका स्थानमा इय् आदेश, किम्का स्थानमा "इदंकिमोरीश्की"ले कि आदेश, विभक्तिलुक्, इकारलोप आदि प्रक्रिया पूर्ववत् भयो, 'कियान्' सिद्ध भयो ।

**संख्या इति**– संख्यावाचक शब्दप्रकृतिक प्रथमान्त समर्थदेखि अस्य यस अर्थमा तयप् प्रत्यय होस्, अवयव बुझिँदामा ।

**पञ्चतयम्**– पञ्च अवयवा अस्य (पाँच छन् अवयव यसका) यस विग्रहमा 'पञ्चन्+जस्'देखि

---

१५१ **उदितवति परस्मिन् प्रत्यये शास्त्रयोनौ गतवति विलयञ्च प्राकृतेऽपि प्रपञ्चे ।**
**सपदि पदमुदीतं केवलं प्रत्ययो यत्तदियदिति मिमीते को हृदा पण्डितोऽपि ॥**

यो श्लोकमा श्लेषद्वारा व्याकरणशास्त्र प्रक्रिया र वेदान्तशास्त्रको सिद्धान्त प्रतिपादन गरेको छ ।
व्याकरणशास्त्रको प्रक्रिया- प्रकृतिदेखि पर प्रत्यय आएपछि प्राकृत प्रपञ्च अर्थात् प्रकृति इदम् शब्दको ई लोप भएपछि केवल प्रत्यय बाँकी रहन्छ । त्यो 'इयत्' शब्द हो । यो विचार गर्न कुन पण्डितले सक्छ ?
वेदान्तशास्त्रको सिद्धान्त- शास्त्रयोनि शास्त्रको मननबाट पर प्रत्यय (परमज्ञान) उदय भएर यो प्राकृत प्रपञ्च (संसार) विलय भएपछि उदित केवल प्रत्यय (ज्ञान)मात्र अवशेष हुन्छ त्यो यति छ भनेर कुन पण्डितले परिमाण गर्न सक्छ ?

**११६८. द्वित्रिभ्यां तयस्यायज्वा ५।२।४३।।**

द्वयम् । द्वितयम् । त्रयम् । त्रितयम् ॥

**११६९. उभादुदात्तो नित्यम् ५।२।४४।।**

उभशब्दात्तयपोऽयच् स्यात् स चाद्युदात्तः । उभयम् ॥

**११७०. तस्य पूरणे डट् ५।२।४८।।**

एकादशानां पूरणः एकादशः ॥

**११७१. नान्तादसङ्ख्यादेर्मट् ५।२।४९।।**

डटो मडागमः । पञ्चानां पूरणः पञ्चमः । नान्तात्किम् ?

---

"संख्याया अवयवे०"ले तयप् प्रत्यय, विभक्तिलुक्, नकारको लोप भयो, 'पञ्चतय'शब्द बन्यो, त्यसदेखि सु आयो, 'पञ्चतयम्' सिद्ध भयो ।

**द्वित्रिभ्यामिति**– द्वि शब्द र त्रि शब्द देखि पर रहेका तयप् प्रत्ययका स्थानमा अयच् आदेश विकल्पले होस् ।

**द्वयम्/द्वितयम्**– द्वौ अवयवौ अस्य (दुई अवयव छन् यसका) यो विग्रहमा 'द्वि+औ'देखि "संख्याया अवयवे०"ले तयप् प्रत्यय भयो, "द्वित्रिभ्यां०"ले तयका स्थानमा अयच् आदेश भयो, 'द्वि+अय' भयो, विभक्तिलुक् र इकारको लोप भयो, 'द्वय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'द्वयम्' सिद्ध भयो । अयच् आदेश नभएको पक्षमा 'द्वितय' शब्ददेखि सु आयो, 'द्वितयम्' सिद्ध भयो ।

**त्रयम्/त्रितयम्**– त्रयोऽवयवा अस्य (तीन छन् अवयव यसका) यस विग्रहमा 'त्रि+जस्'देखि "संख्याया अवयवे०"ले तयप् प्रत्यय भयो, विभक्तिलुक्, तयका स्थानमा "द्वित्रिभ्यां०"ले अयच् आदेश, इकारलोप भयो, 'त्रय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'त्रयम्' सिद्ध भयो । अयच् नभएको पक्षमा 'त्रितय' शब्ददेखि सु आयो, 'त्रितयम्' सिद्ध भयो ।

**उभादुदात्त इति**– उभ शब्ददेखि पर रहेको तय प्रत्ययका स्थानमा नित्य अयच् आदेश होस् । त्यो आद्युदात्त होस् ।

**उभयम्**– उभौ अवयवौ अस्य (दुवै अवयव छन् यसका) यस अर्थमा 'उभ+औ'देखि "संख्याया अवयवे०"ले तयप् प्रत्यय भयो, तयका स्थानमा "उभादुदात्तो०"ले नित्य अयच् आदेश भयो, विभक्तिलुक्, अकारको लोप भयो, उभय शब्द बन्यो, त्यसदेखि सु आयो, 'उभयम्' सिद्ध भयो ।

**तस्य पूरण इति**– सङ्ख्यावाचक शब्दप्रकृतिक षष्ठयन्त समर्थदेखि पूरण अर्थमा डट् प्रत्यय होस् ।

**एकादशः**– एकादशानां पूरणः (एघार सङख्याको पूरक) यस विग्रहमा 'एकादशन्+आम्'देखि "तस्य पूरणे०"ले डट् प्रत्यय भयो, विभक्तिलुक्, "नस्तद्धिते"ले टिलोप भयो, 'एकादश' शब्द बन्यो, त्यसदेखि सु आयो, 'एकादशः' सिद्ध भयो ।

**नान्तादिति**– सङख्यावाचक शब्द पूर्वमा नहुने नकारान्त संख्यावाचक शब्ददेखि पर रहेका डट् को मट् आगम होस् । टकार इत्संज्ञक हो, अकार उच्चारणार्थ हो । मकार मात्र बाँकी रहन्छ ।

**पञ्चमः(पाँचौं)**– पञ्चानां पूरणः (पाँचसंख्याको पूरक) यस विग्रहमा 'पञ्चन्+आम्'देखि "तस्य पूरणे०"ले डट् प्रत्यय भयो, "नान्तादसङ्ख्यादेः०"ले डट् प्रत्ययको मट् आगम, विभक्तिलुक् भयो, 'पञ्चन्+म' यहाँ "नलोपःप्रातिपदिकान्तस्य"ले नकारको लोप भयो, 'पञ्चम' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पञ्चमः' सिद्ध भयो ।

**नान्तात् किमिति**– "नान्तादसङ्ख्यादेः" यस सूत्रमा नकारान्त शब्ददेखि किन भन्नु ?

---

**११७२. ति विंशतेर्डिति ६।४।१४२॥**

विंशतेर्भस्य तिशब्दस्य लोपो डिति परे।

विंशः। असङ्ख्यादेः किम् ? एकादशः॥

**११७३. षट्कतिकतिपयचतुरां थुक् ५।२।५१॥**

एषां थुगागमः स्याड्डटि। षण्णां पूरणः षष्ठः। कतिथः। कतिपयशब्दस्यासङ्ख्यात्वेऽप्यत एव ज्ञापकाड्डट्। कतिपयथः। चतुर्थः॥

---

नकारान्त शब्द नभन्ने हो भने, विंशति आदि शब्ददेखि पर रहेको डट् प्रत्ययको पनि मट् आगम होला। सो नहोस् भनेर नान्तात् भनिएको हो, यो कुरा अगाडि देखाइन्छ।

**ति विंशतेरिति**– विंशति शब्दको अवयव 'ति'शब्दको लोप होस्, डित् प्रत्यय पर भएमा।

**विंशः(बीसौं)**– विंशतेः पूरणः (बीस संख्याको पूरक) यस विग्रहमा 'विंशति+ङस्'देखि "तस्य पूरणे०"ले डट् प्रत्यय भयो, "ति विंशतेर्डिति"ले 'ति'शब्दको लोप, "टेः"ले टिलोप भयो, 'विंश' शब्द बन्यो, त्यसदेखि सु आयो, 'विंशः' सिद्ध भयो। नान्तात् नभनेको भए नकार अन्तमा नहुने विंशति शब्ददेखि पर रहेको डट् प्रत्ययको पनि मट् आगम हुने थियो। नान्तात् भनेकोले यहाँ मट् आगम भएन।

**असङ्ख्यादेः किमिति**– "नान्तादसंख्यादेः" यो सूत्रमा असङ्ख्यादेः किन भन्नु ? नभन्ने हो भने एकादशानां पूरण (एघार संख्याको पूरक) भन्दा यहाँ एकादशन् शब्ददेखि पर रहेको डट् प्रत्ययको मट् आगम होला, सो नहोस् भनेर असंख्यादे (संख्यावाचक शब्द आदिमा नहुने) भनियो, यहाँ एकादश शब्दमा दश शब्दको आदिमा सङ्ख्यावाचक एकशब्द छ र डट् प्रत्ययको मट् आगम भएन 'एकादश' यस्तै रह्यो। एकादश यो उदाहरण पहिले नै दिइएको छ।

**षट्कतिकतिपयेति**– षष् शब्द, कति शब्द, कतिपय शब्द, चतुर् शब्दको थुक् आगम होस्, डट् प्रत्यय पर भएमा। थुक्मा उकार र ककारको इत्संज्ञा, लोप हुन्छ।

**षष्ठः(छैठौं)**– षण्णां पूरणः (छ ओटाको पूरक) यस विग्रहमा 'षष्+आम्'देखि "तस्य पूरणे०"ले डट् प्रत्यय, विभक्तिलुक् भयो, 'षष्+अ'भयो, "षट्कतिकतिपयचतुरां थुक्"ले षष्को थुक् आगम भयो, कित्त्वात् षष्को अन्त्यतर्फ थकार भयो, 'षष्+थ' भयो, ष्टुत्व भयो, 'षष्ठ' शब्द बन्यो, त्यसदेखि सु आयो, 'षष्ठः' सिद्ध भयो।

**कतिथः**– कतीनां पूरणः (कतिको पूरक) यस विग्रहमा 'कति+आम्' देखि "तस्य पूरणे०"ले डट् प्रत्यय, विभक्तिलुक् भयो, "षट्कतिकतिपय०"ले कतिको थुक् आगम भयो, 'कतिथ' शब्द बन्यो, त्यसदेखि सु आयो, 'कतिथः' सिद्ध भयो।

**कतिपयशब्दस्येति**– कतिपय शब्द सङ्ख्यावाचक नभए पनि यही सूत्र ज्ञापक हुनाले डट् प्रत्यय हुन्छ।

**कतिपयथः**– कतिपयानां पूरणः (दुई चारवटाको पूरक) यस विग्रहमा 'कतिपय+जस्'देखि डट् आगम आदि पूर्ववत् भयो, 'कतिपयथ' शब्द बन्यो, त्यसदेखि सु आयो, 'कतिपयथः' सिद्ध भयो।

**चतुर्थः(चौथो)**– चतुर्णाम् पूरणः (चारवटाको पूरक) 'चतुर्+आम्'देखि डट् प्रत्यय, विभक्तिलुक्, थुक् आगम भयो, 'चतुर्थ' शब्द बन्यो, त्यसदेखि सु आयो, 'चतुर्थः' सिद्ध भयो।

"चतुरश्छयतावाद्यक्षरलोपश्च" यो वार्तिकले छ प्रत्यय र यत् प्रत्यय भएर च शब्दको लोप हुँदा तुरीय, तुर्य यी दुई शब्द बन्दछन्। यी पनि चौथोका वाचक हुन्।

---

**११७४. द्वेस्तीयः ५।२।५४॥**
डटोऽपवादः । द्वयोः पूरणो द्वितीयः ॥
**११७५. त्रेः संप्रसारणं च ५।२।५५॥**
तृतीयः ॥
**११७६. श्रोत्रियंश्छन्दोऽधीते ५।२।८४॥**
श्रोत्रियः । वेत्यनुवृत्तेश्छान्दसः ॥
**११७७. पूर्वादिनिः ५।२।८६॥**
पूर्वं कृतमनेन पूर्वी ॥

---

**द्वेस्तीय इति**– द्वि शब्द प्रकृतिक षष्ठचन्त समर्थदेखि तीय प्रत्यय होस् पूरण अर्थमा ।

**डट इति**– यो तीय प्रत्यय डट् प्रत्ययको अपवाद हो ।

**द्वितीयः(दोस्रो)**– द्वयोः पूरणः (दुई संख्याको पूरक) यो विग्रहमा 'द्वि+ओस्'देखि "द्वेस्तीयः"ले तीय प्रत्यय भयो, 'द्वितीय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'द्वितीयः' सिद्ध भयो ।

**त्रेरिति**– त्रि शब्द प्रकृतिक षष्ठचन्त समर्थदेखि पूरण अर्थमा तीय प्रत्यय होस् संप्रसारण पनि होस् ।

**तृतीयः(तेस्रो)**– त्रयाणां पूरणः (तीन वटाको पूरक) यस विग्रहमा 'त्रि+आम्'देखि "त्रेः सम्प्रसारणं च"ले तीय प्रत्यय त्रिशब्दको सम्प्रसारण भयो । संप्रसारण हुँदा त्रिशब्दका रेफका स्थानमा ऋकार भयो, 'तृ+इ+तीय' भयो, "संप्रसारणाच्च"ले पूर्वरूप हुँदा ऋकार र इकारका स्थानमा ऋ भयो, 'तृतीय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'तृतीयः' सिद्ध भयो । अरू पनि पूरणार्थप्रत्ययान्त शब्दहरू । जस्तै- सप्तानां पूरणः सप्तमः, नवानां पूरणः नवम आदि रूपहरू पनि "तस्य पूरणे०" ले डट् प्रत्यय र "नान्तादसंख्यादेः०"ले मट् आगम गरेर नै सिद्ध हुन्छन् । "विंशत्यादिभ्यस्तमडन्यतरस्याम्"ले विंशति आदि शब्ददेखि पूरणः अर्थमा भएको डट् प्रत्ययको तमट् आगम भएर विंशतितम, त्रिंशत्तम, चत्वारिंशत्तम आदि एकपक्षमा तमट् आगम भएका शब्द र तमट् आगम नभएको पक्षमा विंशः, त्रिंशः, चत्वारिंशः आदि शब्द बन्दछन् ।

**श्रोत्रियनिति**– द्वितीयान्त छन्दस् शब्ददेखि अधीते (पढ्छ) यस अर्थमा 'श्रोत्रियन्' यो रूप निपातन गरिन्छ ।

**श्रोत्रियः**– छन्दः अधीते (वेद पढ्दछ) यस विग्रहमा 'छन्दस+अम्'देखि "श्रोत्रियंश्छन्दोऽधीते"ले निपातनात् घन् प्रत्यय छन्दस् शब्दका स्थानमा श्रोत्र आदेश भयो, घकारका स्थानमा इय आदेश, नकारको इत्संज्ञा लोप भयो, 'श्रोत्रिय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'श्रोत्रियः' सिद्ध भयो । यहाँ विकल्पको अनुवृत्ति आउने हुनाले एकपक्षमा "तदधीते तद्वेद"ले अण् प्रत्यय भएर 'छान्दस' शब्द पनि बन्दछ ।

**पूर्वादिति**– (यहाँ "श्राद्धमनेन भुक्तमिनिठनौ"बाट अनेन यस पदको अनुवृत्ति आउँछ ।) क्रियाविशेषणीभूत पूर्व शब्दप्रकृतिक द्वितीयान्त समर्थदेखि अनेन यस अर्थमा इनिप्रत्यय होस् । यहाँ कृतम्, भुक्तम्, पीतम् आदि क्रिया रहन्छन् ।

**पूर्वी**– पूर्वं कृतम् अनेन (पहिले गरियो यसले) यो विग्रहमा 'पूर्व+अम्'देखि प्रकृत सूत्रले इनि प्रत्यय, विभक्तिलुक्, अकारको लोप भयो, 'पूर्विन्' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पूर्वी'

---

११७८. **सपूर्वाच्च ५।२।८७॥**

कृतपूर्वी ॥

११७९. **इष्टादिभ्यश्च ५।२।८८॥**

इष्टमनेन इष्टी अधीती ॥

**इति भवनाद्यर्थकप्रकरणम्** ॥१२॥

---

**सपूर्वाच्च**- विद्यमान विशेषण पूर्वपद भएको पूर्वशब्दप्रकृति द्वितीयान्त समर्थदेखि पनि अनेन यस अर्थमा इनि प्रत्यय होस् ।

**कृतपूर्वी**- कृतं पूर्वम् (गरियो पहिले) यस विग्रहमा "सह सुपा"ले समास भएर 'कृतपूर्व' शब्द बन्यो, कृतपूर्वम् अनेन (पहिले गरिएको छ यसले) यस विग्रहमा 'कृतपूर्व+अम्'देखि "सपूर्वाच्च"ले इनि प्रत्यय भएर पूर्ववत् 'कृतपूर्विन्' शब्द बन्यो, त्यसदेखि सु आयो, 'कृतपूर्वी' सिद्ध भयो ।

**इष्टादिभ्यश्चेति**- इष्टादि गण पठित शब्दप्रकृतिक प्रथमान्त समर्थदेखि इनि प्रत्यय होस्, अनेन यस अर्थमा ।

**इष्टी**- इष्टम् अनेन (पूजा गरियो यसले) यस विग्रहमा 'इष्ट+सु'देखि "इष्टादिभ्यश्च"ले इनि प्रत्यय, विभक्तिलुक्, अकारको लोप भयो, 'इष्टिन्' शब्द बन्यो, त्यसदेखि सु आयो, 'इष्टी' सिद्ध भयो ।

**अधीती**- अधीतम्, अनेन (पढियो यसले) यो विग्रहमा 'अधीत+सु'देखि उक्त सूत्रले इनि प्रत्यय भयो, विभक्तिलुक्, अकारको लोप भयो, 'अधीतिन्' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अधीती' सिद्ध भयो ।

**भवनाद्यर्थकप्रकरण सकियो ।**

------------------

## अथ मत्वर्थीयाः

**११८०. तदस्यास्त्यस्मिन्निति मतुप् ५।२।९४।।**

गावोऽस्यास्मिन्वा सन्ति गोमान् ॥

**११८१. तसौ मत्वर्थे १।४।१९।।**

तान्तसान्तौ भसंज्ञौ स्तो मत्वर्थे प्रत्यये परे ।

---

-------------------

**अब मत्वर्थीयप्रकरण आरम्भ गरिन्छ ।**

**तदस्येति**– प्रथमान्तसमर्थदेखि अस्य अस्ति (यसको छ) अथवा अस्मिन् अस्ति (यसमा छ) यो अर्थमा मतुप् प्रत्यय होस् । मतुप्मा उप को इत्संज्ञा, लोप हुन्छ ।

सूत्रमा आएको 'तद्'ले प्रथमान्तसमर्थ भन्ने र 'अस्य अस्ति', 'अस्मिन् अस्ति'ले अर्थ बुझाउँछ । अर्थात् अस्ति यो विवक्षामा मतुप्, इनि आदि प्रत्यय हुन्छन् । महाभाष्यकार भन्दछन्-

भूमनिन्दाप्रशंसासु नित्ययोगेऽतिशायने ।

संबन्धेऽस्तिविवक्षायां भवन्ति मतुबादयः ॥ २।३।९३ म.भा.

भूमा भनेको बहुत्व वा अधिकता हो । गावः सन्ति अस्य गोमान् (गाई धेरै भएको व्यक्ति) यो आपेक्षिक छ । साधारण व्यक्तिका दश, आठ गाई भएपनि गोमान् भन्न सकिन्छ । तर राजा जमीन्दारहरू दश, आठ गाई पालेर गोमान् कहलाउँदैनन् ।

**निन्दा**– श्वित्रम् अस्य अस्ति अस्मिन् वा (श्वेतकुष्ठ छ यसको) यो विग्रहमा 'श्वित्री' यो रूप बन्दछ । यहाँ निन्दा बुझिन्छ ।

**प्रशंसा**– रूपम् अस्ति अस्याः (राम्रो रूप छ यसको) यो विग्रहमा 'रूपवती कन्या' यस्तो रूप हुन्छ । यहाँ प्रशंसा बुझिन्छ ।

**नित्ययोग**– नित्यसंबन्ध क्षीरमस्ति येषां ते (दूध छ जसमा) क्षीरिणो वृक्षा (दूध भएका रुखहरू) यहाँ रूखमा दूधको नित्यसम्बन्ध छ ।

**अतिशायन**– उदरमस्ति अस्याः (ठूलो पेट छ यसको) 'उदरिणी कन्या' ठूलोपेट भएकी केटी । यहाँ अतिशय अर्थ बुझिन्छ ।

**सबन्ध**– दण्डमस्ति अस्य (लौरो छ यसको) 'दण्डी पुरुषः' यहाँ दण्डसँग पुरुषको संसर्ग संबन्ध छ ।

**गोमान्**– गावः सन्ति अस्य (गाई छन् यसका) यो विग्रहमा 'गो+जस्'देखि "तदस्यास्त्यस्मिन्०"ले मतुप् प्रत्यय भयो, उकार पकारको इत्संज्ञा, लोप भयो, विभक्तिलुक् भयो, 'गोमत्' शब्द बन्यो, त्यसदेखि सु आयो, 'गोमान्' सिद्ध भयो ।

**तसाविति**– तकारान्त र सकारान्त शब्द भसंज्ञक होऊन्, मत्वर्थीय प्रत्यय पर भएमा ।

गरुत्मान् । "वसोः संप्रसारणम्" । विदुष्मान् । **वा.**(गुणवचनेभ्यो मतुपो लुगिष्टः) । शुक्लो गुणोऽस्यास्तीति शुक्लः पटः । कृष्णः ॥

**११८२. प्राणिस्थादातो लजन्यतरस्याम् ५।२।९६॥**

चूडालः । चूडावान् । प्राणिस्थात्किम् ? शिखावान् दीपः । **(वाः)** प्राण्यङ्गादेव । नेह

---

**गरुत्मान् (गरुड)**– गरुतः सन्ति अस्य अस्मिन् वा (प्वाँख छन् यसका अथवा यसमा) यो विग्रहमा 'गरुत्+जस्'देखि "तदस्यास्त्यस्मिन्निति मतुप्"ले मतुप् प्रत्यय भयो, विभक्तिलुक् भयो, "तसौ मत्वर्थे"ले गरुत् शब्दको भसंज्ञा भयो, पदसंज्ञा भएन अतः "झलां जशोन्ते"ले जश्त्व भएन, "प्रत्यये भाषायां नित्यम्" पनि लागेन, गरुत्मत् यस्तै रह्यो, त्यसदेखि सु आयो, 'गरुत्मान्' सिद्ध भयो ।

**वसोरिति**- "वसोः सम्प्रसारणम्"ले सम्प्रसारण हुन्छ ।

**विदुष्मान्(विद्वानहरू भएको व्यक्ति)**– विद्वांसः सन्ति अस्य अस्मिन् वा (विद्वान्हरू छन् यसका अथवा यसमा) यो विग्रहमा 'विद्वस्+जस्'देखि "तदस्यास्त्यस्मिन्०"ले मतुप् भयो, विभक्तिको लुक् भयो "तसौ मत्वर्थे"ले भसंज्ञा भयो, "वसोः सम्प्रसारणम्"ले सम्प्रसारण भयो, "संप्रसारणाच्च"ले पूर्वरूप भयो, 'विदुष्मत्' शब्द बन्यो, त्यसदेखि सु आयो, 'विदुष्मान्' सिद्ध भयो ।

(**वा.**) **गुणवचनेभ्य इति**– गुणवाचक शब्ददेखि पर रहेको मतुप् प्रत्ययको लुक् इष्ट छ ।

**शुक्लः पटः**– शुक्लो गुणोऽस्य अस्ति (सेतो गुण छ यसको) यो विग्रहमा शुक्ल सुदेखि मतुप् प्रत्यय भयो, विभक्तिलुक् भयो, "गुणवचनेभ्यो मतुपो०" यो वार्तिकले मतुप्को पनि लुक् भयो, 'शुक्ल' शब्द बन्यो, त्यसदेखि सु आयो, 'शुक्लः' सिद्ध भयो ।

यसको प्रयोग- शुक्लः पटः (सेतो रंगको कपडा) "यः शिष्यते स लुप्यमानार्थाभिधायी" यो परिभाषा लगाएर शुक्ल शब्दले शुक्लगुणवान् कपडालाई बुझायो ।

**प्राणिस्थात्किमिति**– प्राणीमा रहने अङ्गवाचक आकारान्त शब्दप्रकृतिक प्रथमान्त समर्थदेखि मतुप् प्रत्ययको अर्थमा लच् प्रत्यय विकल्पले होस् ।

**चूडालः**– चूडा अस्ति अस्य (कल्की छ यसको) यस विग्रहमा 'चूडा+सु'देखि "प्राणिस्थादातो०"ले लच् प्रत्यय भयो, विभक्तिलुक् भयो, 'चूडाल' शब्द बन्यो, त्यसदेखि सु आयो, 'चूडालः' सिद्ध भयो । लच् प्रत्यय नभएको पक्षमा मतुप् प्रत्यय भयो, मतुप्का मकारको "मादुपधायाश्च मतोर्वोऽयवादिभ्यः"ले मतुप्का मकारका स्थानमा वकार भयो, 'चूडावत्' शब्द बन्यो, त्यसदेखि सु आयो, 'चूडावान्' सिद्ध भयो । यहाँ चूडा (कल्की) प्राणीमा रहने अङ्ग हो ।

**प्राणिस्थादिति किमिति**– प्राणीमा रहने किन भन्नु ? नभन्ने हो भने शिखा अस्ति अस्य (ज्वाला छ, यसको) यस विग्रहमा आकारान्त शिखा शब्ददेखि लच् प्रत्यय होला, सो नहोस् भनेर प्राणीमा रहने भनियो । यो शिखा (ज्वाला) प्राणीमा रहने भएपनि यहाँ प्राणीमा रहेको छैन र लच् प्रत्यय भएन । मतुप् प्रत्यय भयो, मकारको स्थानमा उक्त सूत्रले वकार भयो, शिखावत् शब्द बन्यो, त्यसदेखि सु आयो, 'शिखावान्' सिद्ध भयो । यसको प्रयोग- शिखावान् दीपः (ज्वाला भएको बत्ती ।)

(**वा.**) **प्राण्यङ्गादेवेति**– प्राण्यङ्गवाचक शब्ददेखि मात्र लच् प्रत्यय होस् भन्नू ।

**मेधावान्**- मेधा अस्ति अस्य (बुद्धि छ यसको) यस विग्रहमा 'मेधा+सु'देखि मेधा शब्द आकारान्त पनि छ, प्राणिस्थ पनि छ र "प्राणिस्थादात०:"ले लच् प्रत्यय पाएको थियो । प्रकृत वार्तिकले निषेध भयो । किनकि हातपाउ नाक, कान, मुख आदि अङ्ग मानिन्छ, मेधालाई अङ्ग

---

मेधावान् ॥

१९८३. **लोमादिपामादिपिच्छादिभ्यः शनेलचः ५।२।१००॥**

लोमादिभ्यः शः । लोमशः । लोमवान् ।रोमशः ।रोमवान् । पामादिभ्यो नः । पामनः । **ग.सू.**(अङ्गात्कल्याणे) अङ्गना । **ग.सू.** (लक्ष्म्या अच्च) लक्ष्मणः । पिच्छादिभ्य इलच् ।

---

वार्तिकले निषेध भयो । किनकि हातपाउ नाक, कान, मुख आदि अङ्ग मानिन्छ, मेधालाई अङ्ग मानिंदैन । त्यसकारण मेधा शब्ददेखि लच् प्रत्यय भएन, मतुप् प्रत्यय भयो । पूर्वसूत्रले मतुप्का मकारका स्थानमा वकार भयो, 'मेधावत्' शब्द बन्यो, त्यसदेखि सु आयो, 'मेधावान्' सिद्ध भयो ।

**लोमादीति–** लोमादि, पामादि र पिच्छादि शब्दप्रकृतिक प्रथमान्त समर्थदेखि मतुप् प्रत्ययको अर्थमा क्रमैले श प्रत्यय, न प्रत्यय र इलच् प्रत्यय विकल्पले होऊन् । लोमादिदेखि श प्रत्यय हुन्छ ।

**लोमशः / लोमवान्–** लोमानि सन्ति अस्य (रौंहरू छन् यसका) यस विग्रहमा 'लोमन्+जस्'देखि "लोमादिपामादि०"ले श प्रत्यय भयो, विभक्तिलुक् भयो, 'लोमन्+श' भयो, "नलोपः प्रातिपदिकान्तस्य"ले नकारको लोप भयो, लोमश शब्द बन्यो, त्यसदेखि सु आयो, 'लोमशः' सिद्ध भयो । श प्रत्यय नभएको पक्षमा मतुप् प्रत्यय भयो, पूर्ववत् सबै प्रक्रिया भएर 'लोमवान्' सिद्ध भयो ।

**पामनः–** पामा अस्ति अस्य (लुतो छ यसको) यो विग्रहमा 'पामन्+सु'देखि "लोमादिपामादि०"ले यो पामादि शब्द हुनाले न प्रत्यय भयो, 'पामन्+न' भयो, पामन्का नकारको "नलोपः प्रातिपदिकान्तस्य"ले लोप भयो, पामन शब्द बन्यो, त्यसदेखि सु आयो, 'पामनः' सिद्ध भयो ।

न प्रत्यय नभएको पक्षमा, मतुप् प्रत्यय भएपछि पूर्ववत् प्रक्रिया भएर 'पामवान्' यो रूप सिद्ध हुन्छ ।

**(ग.सू.) अङ्गादिति–** कल्याण अर्थ विशिष्ट अङ्गशब्द प्रकृतिक प्रथमान्त समर्थदेखि न प्रत्यय होस्, मतुप्को अर्थमा ।

**अङ्गना–** कल्याणानि अङ्गानि यस्याः (सुन्दर छन् अङ्ग जसका) यो विग्रहमा 'अङ्ग+जस्'देखि प्रकृत वार्तिकले 'न' प्रत्यय भयो, स्त्रीत्वात् टाप् प्रत्यय भयो, अङ्गना शब्द बन्यो, त्यसदेखि सु आयो, 'अङ्गना' सिद्ध भयो ।

**(ग.सू.) लक्ष्म्या अच्चेति–** लक्ष्मी शब्दप्रकृतिक प्रथमान्त समर्थदेखि 'न' प्रत्यय होस्, नकारका स्थानमा अकार आदेश पनि होस्, मतुप् प्रत्ययको अर्थमा ।

**लक्ष्मणः–** लक्ष्मी अस्ति अस्य (लक्ष्मी छन् यसकी) यो विग्रहमा 'लक्ष्मी+सु'देखि प्रकृत वार्तिकले 'न' प्रत्यय र नकारका स्थानमा अकार भयो, पररूप, णत्व भयो, लक्ष्मण शब्द बन्यो, त्यसदेखि सु आयो, 'लक्ष्मणः' सिद्ध भयो ।

**पिच्छादिभ्य इति–** पिच्छादिदेखि इलच् प्रत्यय हुन्छ ।

**पिच्छिलः(चिप्लोपन भएको)–** पिच्छा अस्ति अस्य (चिप्लोपन छ यसको) यस विग्रहमा 'पिच्छा+सु'देखि "लोमादिपामादि०"ले इलच् प्रत्यय भयो, 'पिच्छा+इल' आकारलोप भयो, 'पिच्छिल'शब्द बन्यो, त्यसदेखि सु आयो, 'पिच्छिलः' सिद्ध भयो ।

इलच् प्रत्यय नभएको पक्षमा मतुप् प्रत्यय भएर 'पिच्छावत्' शब्द बन्दछ, त्यसदेखि सु आएर, 'पिच्छावान्' यो रूप पनि सिद्ध हुन्छ ।

**पिच्छवान्–** पिच्छादिमा अकारान्त पिच्छ शब्द मानेमा 'पिच्छम् अस्ति अस्य' यो विग्रह

पिच्छिलः । पिच्छवान् ॥

**११८४. दन्त उन्नत उरच् ५।२।१०६॥**

उन्नता दन्ताः सन्त्यस्य दन्तुरः ॥

**११८५. केशाद्वोऽन्यतरस्याम् ५।२।१०९॥**

केशवः । केशी । केशिकः । केशवान् । **वा**.(अन्येभ्योऽपि दृश्यते) । मणिवः । **वा**. (अर्णसो लोपश्च) । अर्णवः ॥

**११८६. अत इनिठनौ ५।२।११६॥**

---

**दन्त इति**– उन्नत विशेषण भएको दन्त शब्दप्रकृतिक प्रथमान्त समर्थदेखि मतुप् प्रत्ययको अर्थमा उरच् प्रत्यय होस् ।

**दन्तुरः(दाह्रे)**– उन्नता दन्ताः सन्ति अस्य (उच्च छन् दाँत यसका) यो विग्रहमा 'दन्त+जस्'देखि "दन्त उन्नत उरच्"ले उरच् प्रत्यय भयो, विभक्तिलुक्, अकारको लोप भयो, 'दन्तुर'शब्द बन्यो, त्यसदेखि सु आयो, 'दन्तुर' सिद्ध भयो ।

**केशाद्व इति**– केश शब्दप्रकृतिक प्रथमान्त समर्थदेखि मतुप् प्रत्ययको अर्थमा व प्रत्यय विकल्पले होस् । यो सूत्रमा अन्यतरस्याम् ग्रहण गरेको इनि प्रत्यय र ठन् प्रत्ययको समावेशको निमित्त हो । "समर्थानां प्रथमाद्वा" यो सूत्रको अधिकारले विकल्प सिद्ध नै छ, अतः मतुप् प्रत्यय पनि हुन्छ र यहाँ 'व' प्रत्यय, इनि प्रत्यय, ठन् प्रत्यय र मतुप् प्रत्यय भएका चार रूप हुन्छन् ।

**केशवः**– केशा सन्ति अस्य (केशहरू छन् यसका) यो विग्रहमा 'केश+जस्'देखि "केशाद् वोऽन्यतरस्याम्"ले 'व' प्रत्यय, विभक्तिलुक् भयो, केशव शब्द बन्यो, त्यसदेखि सु आयो, 'केशवः' सिद्ध भयो । एकपक्षमा "अत इनिठनौ"ले इनि प्रत्यय भयो, 'केशिन्'शब्द बन्यो, त्यसदेखि सु आयो, 'केशी' सिद्ध भयो । ठन् प्रत्यय भयो, ठका स्थानमा इक आदेश भयो, 'केशिक'शब्द बन्यो, त्यसदेखि सु आयो, 'केशिकः' सिद्ध भयो । एकपक्षमा मतुप् प्रत्यय भयो, 'केशवत्'शब्द बन्यो, त्यसदेखि सु आयो, 'केशवान्' सिद्ध भयो ।

**(वा.) अन्येभ्योऽपीति**– केश शब्दबाहेक अरू शब्द देखि पनि मत्वर्थीय व प्रत्यय देखिन्छ ।

**मणिवः(नागविशेष)**– मणिः अस्य अस्ति (मणि छ यसको) यो विग्रहमा 'मणि+सु'देखि "अन्येभ्यो ऽपि०"ले व प्रत्यय भयो, 'मणिव' शब्द बन्यो, त्यसदेखि सु आयो, 'मणिवः' सिद्ध भयो ।

**(वा.) अर्णस इति**–अर्णस् शब्दप्रकृतिक प्रथमान्त समर्थदेखि 'व' प्रत्यय होस्, सकारको लोप पनि होस् ।

**अर्णवः(समुद्र)**– अर्णांसि सन्ति अस्य (पानीहरू छन् यसका) यो विग्रहमा 'अर्णस्+जस्'देखि "अर्णसो लोपश्च"ले 'व' प्रत्यय, सकारको लोप भयो, विभक्तिलुक् भयो, 'अर्णव'शब्द बन्यो, त्यसदेखि सु आयो, 'अर्णवः' सिद्ध भयो ।

**अत इति**–अकारान्त शब्दप्रकृतिक प्रथमान्त समर्थदेखि मतुप् प्रत्ययको अर्थमा इनि प्रत्यय र ठन् प्रत्यय होऊन् । यहाँ 'अन्यतरस्याम्'को अनुवृत्ति आउने हुनाले मतुप् प्रत्यय पनि हुन्छ ।

**दण्डी दण्डिकः दण्डवान्**– दण्डोऽस्यास्ति (दण्ड छ यसको) यस विग्रहमा दण्डशब्द अकारान्त हुनाले 'दण्ड+सु'देखि इन् प्रत्यय भयो, अकारको लोप भयो, दण्डिन् शब्द बन्यो, त्यसदेखि सु आयो, 'दण्डी' सिद्ध भयो । एकपक्षमा ठन् प्रत्यय भयो, ठकारका स्थानमा इक आदेश, विभक्तिलुक्, अकारको लोप भयो, 'दण्डिक'शब्द बन्यो, त्यसदेखि सु आयो, 'दण्डिकः' सिद्ध भयो । एकपक्षमा मतुप् प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भएर 'दण्डवत्'शब्द बन्यो, त्यसदेखि सु आयो , 'दण्डवान्' सिद्ध भयो ।

---

दण्डी । दण्डिकः ॥

११८७. **व्रीह्यादिभ्यश्च ५।२।११५॥**

व्रीही । व्रीहिकः ॥

११८८. **अस्मायामेधास्रजो विनिः ५।२।१२१॥**

यशस्वी । यशस्वान् । मायावी । मेधावी । स्रग्वी ॥

११८९. **वाचो ग्मिनिः ५।२।१२४॥**

---

**व्रीह्यादिश्चेति**– व्रीह्यादि शब्दप्रकृतिक प्रथमान्त समर्थदेखि मतुप् प्रत्ययको अर्थमा इनि प्रत्यय र ठन् प्रत्यय होऊन् ।

**व्रीही/व्रीहिकः**– व्रीहयः सन्ति अस्य (धानहरू छन् यसका) यो विग्रहमा 'व्रीहि+जस्'देखि "व्रीह्यादिभ्यश्च"ले इनि प्रत्यय, विभक्तिलुक् भयो, 'व्रीहि+इन्' भयो, यहाँ व्रीहिका इकारको "यस्येति च"ले लोप भयो, 'व्रीहिन्'शब्द बन्यो, त्यसदेखि सु आयो, 'व्रीही' सिद्ध भयो । एकपक्षमा ठन् प्रत्यय भयो, ठकारका स्थानमा इक आदेश भयो, 'व्रीहि+इक' भयो, "यस्येति च"ले इकारको लोप भयो, व्रीहिक शब्द बन्यो, त्यसदेखि सु आयो, 'व्रीहिकः' सिद्ध भयो ।

**अस्मायेति**– अस् अन्तमा हुने शब्द, माया शब्द मेधा शब्द र स्रज् शब्दप्रकृतिक प्रथमान्त समर्थदेखि मतुप् प्रत्ययको अर्थमा विनि प्रत्यय विकल्पले होस् ।

**यशस्वी**– यशः अस्ति अस्य (कीर्ति छ जसको) यस विग्रहमा 'यशस्+सु'देखि "अस्मायामेधास्रजो विनिः"ले विनि प्रत्यय, विभक्तिलुक् भयो, यशस्विन् शब्द बन्यो, त्यसदेखि सु आयो, 'यशस्वी' सिद्ध भयो । विनि नभएको पक्षमा मतुप् प्रत्यय भयो, मकारका स्थानमा वकार भयो, यशस्वत् शब्द बन्यो, त्यसदेखि सु आयो 'यशस्वान्' सिद्ध भयो ।

यी दुवै ठाउँमा "तसौ मत्वर्थे"ले भसंज्ञा भएकोले पदसंज्ञा भएन र रुत्व भएन ।

**मायावी**– माया अस्ति अस्य (कपट छ यसको) यो विग्रहमा 'माया+सु'देखि "अस्मायामेधास्रजो०"ले विनिप्रत्यय भयो, मायाविन् शब्द बन्यो, त्यसदेखि सु आयो, 'मायावी' सिद्ध भयो । एकपक्षमा मतुप् प्रत्यय भएर पूर्ववत् 'मायावान्' यो रूप पनि सिद्ध हुन्छ ।

**मेधावी**– मेधा अस्ति अस्य (धारणावती बुद्धि छ यसको) यस विग्रहमा 'मेधा+सु'देखि प्रकृत सूत्रले विनि प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भएर 'मेधावी' सिद्ध भयो । एकपक्षमा मतुप् प्रत्यय भएर, पूर्ववत् प्रक्रिया भएपछि 'मेधावान्' यो रूप पनि सिद्ध हुन्छ ।

**स्रग्वी**– स्रक् अस्ति अस्य (माला छ यसको भन्दा) यस विग्रहमा 'स्रज्+सु'देखि प्रकृत सूत्रले विनि प्रत्यय, विभक्तिलुक् भयो, 'स्रज्+विन्' भयो, "क्विन्प्रत्ययस्य कुः"ले जकारको कुत्व भयो, 'स्रग्विन्'शब्द बन्यो, त्यसदेखि सु आयो, 'स्रग्वी' सिद्ध भयो । एकपक्षमा मतुप् प्रत्यय, मतुप्का मकारका स्थानमा वकार, जकारको कुत्व भएर, 'स्रग्वत्' शब्द पनि बन्दछ ।

**वाच इति**–वाच्शब्दप्रकृतिक प्रथमान्तसमर्थदेखि ग्मिनि प्रत्यय होस् मतुप् प्रत्ययको अर्थमा ।

**वाग्ग्मी**– वाचः सन्ति अस्य (वाणीहरू छन् यसका) यो विग्रहमा 'वाच्+जस्'देखि ग्मिनि प्रत्यय भयो, 'वाच्+ग्मिन्' भयो, चकारको जश्त्व, कुत्व भयो, 'वाग्ग्मिन्'शब्द बन्यो, त्यसदेखि सु आयो 'वाग्ग्मी' सिद्ध भयो । यहाँ "प्रत्यये भाषायां नित्यम्" यो वार्तिक नलागोस् भन्ने अभिप्रायले ग्मिनि प्रत्ययको आदिमा गकार पढेको हो, अतः दुई गकारको आवश्यकता छैन । वाग्मी यौटै गकार भएको रूप पनि शुद्ध हुन्छ भन्ने कसैको भनाइ छ ।

---

वाग्ग्मी ॥

**११९०. अर्शआदिभ्योऽच् ५।२।१२७॥**

अर्शोऽस्य विद्यते अर्शसः । आकृतिगणोऽयम् ॥

**११९१. अहंशुभमोर्युस् ५।२।१४०॥**

अहंयुः । अहङ्कारवान् । शुभंयुस्तु शुभान्वितः ॥

**इति मत्वर्थीयप्रकरणम् ॥१३॥**

---

गकार भएको रूप पनि शुद्ध हुन्छ भन्ने कसैको भनाइ छ ।

**आर्श आदिभ्य इति**– अर्शस्आदि शब्दप्रकृतिक प्रथमान्त समर्थदेखि अच् प्रत्यय होस्, मतुप् प्रत्ययको अर्थमा ।

**अर्शसः**– अर्शो विद्यतेऽस्य (अर्श रोग छ यसको) यस विग्रहमा 'अर्शस्+सु'देखि "अर्श आदिभ्योऽच्"ले अच् प्रत्यय, विभक्तिलुक् भयो, 'अर्शस'शब्द बन्यो, त्यसदेखि सु आयो, 'अर्शसः' सिद्ध भयो । यो अर्शआदि गण आकृति गण हो । यसभित्र पाप शब्द पनि पर्दछ ।

**पापः**–पापानि सन्ति अस्य(पापहरू छन् यसका) यस विग्रहमा 'पाप+जस्'देखि प्रकृत सूत्रले अच् प्रत्यय, विभक्तिलुक्, अकारलोप भएर पाप शब्द बन्यो, त्यसदेखि सु आयो, 'पापः' सिद्ध भयो । प्रयोग– पापः पुरुषः (पाप भएको मान्छे)

पापीलाई कहँने अर्शआदि, अच्प्रत्ययान्त, पाप शब्द विशेष्यनिघ्न हुनाले तीनै लिङ्गमा रहन्छ । पापलाई कहँने पाप शब्द नपुंसकलिङ्गमा रहन्छ ।

**अहंशुभमोरिति**– अहम् शुभम् यी मकारान्त अव्ययदेखि मतुप् प्रत्ययको अर्थमा युस् प्रत्यय होस् ।

**अहंयुः**– अहम् अस्ति अस्य (अहङ्कार छ यसको) यस विग्रहमा अहम् शब्ददेखि युस् प्रत्यय, अनुबन्धलोप भयो, "सिति च"ले अहम्लाई पदसंज्ञा भयो, "मोऽनुस्वारः"ले मकारका स्थानमा अनुस्वार भयो, 'अहंयुस्' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अहंयुः' सिद्ध भयो ।

**शुभंयुः**– शुभम् अस्ति अस्य (कल्याण छ यसको) भन्दा शुभम् शब्ददेखि युस् प्रत्यय भयो, पूर्ववत् 'शुभंयु' शब्द बन्यो, त्यसदेखि सु आयो, 'शुभंयुः' सिद्ध भयो ।

'अहङ्कारवानहंयुः शुभंयुस्तु शुभान्वितः' (अमरकोश)

यो मत्वर्थीयप्रकरणमा लाघवको अपेक्षाले उदाहरणहरूको विग्रहमा प्रायः 'अस्ति अस्य' आदि षष्ठ्यन्त विग्रहमात्र दिइएको छ, तर ती सबै ठाउँमा 'अस्ति अस्मिन्' आदि सप्तम्यन्त विग्रह पनि हुन्छ भन्ने संझनू ।

**मत्वर्थीय प्रकारण सकियो**

---

## अथ प्राग्दिशीयाः

११९२. **प्राग्दिशो विभक्तिः ५।३।१॥**

दिक्छब्देभ्य इत्यतः प्राग्वक्ष्यमाणाः प्रत्यया विभक्तिसंज्ञाः स्युः ॥

११९३. **किंसर्वनामबहुभ्योऽद्वयादिभ्यः ५।३।२॥**

किमः सर्वनाम्नो बहुशब्दाच्चेति प्राग्दिशोऽधिक्रियते ॥

११९४. **पञ्चम्यास्तसिल् ५।३।७॥**

पञ्चम्यन्तेभ्यः किमादिभ्यस्तसिल् वा स्यात् ॥

११९५. **कु तिहोः ७।२।१०४॥**

किमः कुः स्यात्तादौ हादौ च विभक्तौ परतः । कुतः, कस्मात् ॥

११९६. **इदम इश् ५।३।३॥**

---

"**समर्थानां प्रथमाद् वा**" यो सूत्रको अधिकार सकियो ।

**प्रागिदश इति**– "दिक्शब्देभ्यः० (५।३।२७)" यो सूत्रदेखि पहिले बताइने प्रत्यय विभक्तिसंज्ञक होऊन् ।

**किमिति**– "दिक्शब्देभ्यः०" यो सूत्रदेखि पूर्व सम्म "द्विआदि शब्दबाहेक किम् शब्द, सर्वनामसंज्ञक शब्द र बहु शब्ददेखि" यो अधिकार गरिन्छ । यस प्रकरणमा हुने प्रत्यय यिनै शब्ददेखि हुन्छन् ।

**पञ्चम्या इति**– पञ्चम्यन्त किम् आदि शब्ददेखि तसिल् प्रत्यय होस् ।

**कु तीति**– किम् शब्दका स्थानमा कु आदेश होस्, तकार आदिमा हुने र हकार आदिमा हुने प्रत्यय पर भएमा ।

**कुतः**– कस्मात् (कहाँबाट) यो विग्रहमा 'किम्+ङसि'देखि "पञ्चम्यास्तसिल्"ले तसिल् प्रत्यय भयो, 'किम्+ङसि+तस्' यहाँ "कृत्तद्धितसमासाश्च"ले प्रातिपदिकसंज्ञा "सुपो धातुप्रातिपदिकयोः"ले ङसिको लुक् भयो, "कु तिहोः"ले किम्का स्थानका कु आदेश भयो, 'कुतस्' शब्द बन्यो, यो अव्ययसंज्ञक शब्द हुनाले सु आयो, लुक् भयो, कुतस्का सकारको रुत्व, विसर्ग भयो, 'कुतः' सिद्ध भयो । तसिल् प्रत्यय नभएको पक्षमा किम् शब्ददेखि ङसि पर भएमा 'कस्मात्' सिद्ध भयो ।

यस्तै प्रकारले सर्वतः, विश्वतः, बहुतः, आदि रूप सिद्ध हुन्छन् ।

**इदम इति**– इदम् शब्दका स्थानमा इश् आदेश होस्, प्राग्दिशीय प्रत्यय पर भएमा ।

**इतः**– अस्मात् (यहाँबाट) यो विग्रहमा 'इदम्+ङसि'देखि "पञ्चम्यास्तसिल्"ले तसिल्

प्राग्दिशीये परे । इतः ॥

**११९७. अन् ५।३।५॥**

एतदः प्राग्दिशीये । अनेकाल्त्वात्सर्वादेशः । अतः । अमुतः । यतः । ततः । बहुतः । द्व्यादेस्तु द्वाभ्याम् ॥

**११९८. पर्यभिभ्यां च ५।३।९॥**

आभ्यां तसिल् स्यात् । परितः । सर्वत इत्यर्थः । अभितः । उभयत इत्यर्थः ॥

---

प्रत्यय भयो, "इदम् इश्"ले इदम्का स्थानमा इश् आदेश भयो, 'इतस्' शब्द बन्यो, त्यसदेखि सु आयो, लुक् भयो, 'इतः' सिद्ध भयो ।

**अन्**– एतद् शब्दका स्थानमा अन् आदेश होस्, प्राग्दिशीय प्रत्यय पर भएमा । यो अन् आदेश अनेकाल् हुनाले एतद् यो सबैका स्थानमा हुन्छ ।

यहाँ स्मरण राख्नु पर्ने- "एतदोऽन्" यो एउटै सूत्रलाई योगविभाग गरेर "एतदः", "अन्", यी दुई सूत्र बनाइएको छ, यो पछिल्लो सूत्र हो । अघिल्लो सूत्र केही पछि छ ।

**अतः**– एतस्मात् (यसबाट) यो विग्रहमा 'एतद्+ङसि'देखि "पञ्चम्यास्तसिल्"ले तसिल्प्रत्यय भयो, 'एतद्+तस्' भयो, "अन्"ले एतद्का स्थानमा अन् आदेश भयो, 'अन्+तस्'भयो, नकारको "नलोपः प्रातिपदिकान्तस्य"ले लोप भयो, 'अतस्' यो अव्यय शब्द बन्यो, त्यसदेखि सु आयो, लुक् भयो, रुत्व, विसर्ग भयो, 'अतः' सिद्ध भयो ।

**अमुतः**– अमुष्मात् (यसबाट) यस विग्रहमा 'अदस्+ङसि'देखि पूर्वसूत्रले तसिल् प्रत्यय विभक्तिलुक् भयो, तसिल् यो विभक्ति पर हुनाले "त्यदादीनामः"ले अत्व, "अतो गुणे"ले पररूप भयो, 'अद+तस्' भयो, "अदसोसेर्दादुदोमः"ले उत्व, मत्व भयो, 'अमुतस्' अव्यय शब्द बन्यो, त्यसदेखि सु आयो, लुक् भयो, रुत्व, विसर्ग भयो, 'अमुतः' सिद्ध भयो । तसिल् प्रत्ययान्त शब्दलाई "तद्धितश्चासर्वविभक्तिः"ले अव्ययसंज्ञा हुने हुनाले "अव्ययादाप्सुपः"ले विभक्तिको लुक् हुन्छ ।

**यतः**– यस्मात् (जसबाट) यो विग्रहमा 'यद्+ङस्'देखि उक्त सूत्रले तसिल् प्रत्यय, विभक्तिलुक् भयो, त्यद्का दकारको "त्यदादीनामः"ले अत्व, पररूप भयो, 'यतस्' यो अव्यय शब्द बन्यो, त्यसदेखि औत्सर्गिक एकवचन सु आयो, लुक् भयो, रुत्व, विसर्ग भयो, 'यतः' सिद्ध भयो ।

**बहुतः**– बहुभ्यः (धेरैबाट) यस विग्रहमा 'बहु+भ्यस्'देखि तसिल् प्रत्यय, विभक्तिलुक् आदि पूर्ववत् भयो, 'बहुतः' सिद्ध भयो ।

यहाँ प्रस्तुत उदाहरणहरूमा पञ्चमीको एकवचनको विग्रह कस्मात् आदि राखेर रूप सिद्ध गरिएको छ । द्विवचन र बहुवचन काभ्याम्, केभ्यः आदि विग्रह राखेर पनि तसिल् प्रत्यय गर्दा पनि कुतः आदि रूप सिद्ध हुन्छन् ।

**द्व्यादेरिति**– द्वि आदि शब्दबाट त तसिल् प्रत्यय हुँदैन, द्वाभ्याम् आदि रूप हुन्छन् ।

**पर्यभिभ्यामिति**– अव्ययसंज्ञक परिशब्द र अभिशब्ददेखि पनि तसिल् प्रत्यय होस् ।

**परितः(चारैतिरबाट)**– परि इति (चारैतिरबाट) यस विग्रहमा परि शब्ददेखि "पर्यभिभ्यां च"ले तसिल् प्रत्यय भयो, 'परितस्' शब्द बन्यो, पूर्ववत् 'परितः' सिद्ध भयो ।

**अभितः(दुवैतिरबाट)**– अभि इति (दुवैतिरबाट) यस विग्रहमा उक्त सूत्रले तसिल् प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भएर 'अभितः' सिद्ध भयो ।

**सप्तम्या इति**– सप्तम्यन्त किम् आदि शब्ददेखि त्रल्प्रत्यय होस् ।

---

११९९. **सप्तम्यास्त्रल् ५।३।१०॥**

कुत्र । यत्र । तत्र । बहुत्र ॥

१२००. **इदमो हः ५।३।११॥**

त्रलोऽपवादः । इह ॥

१२०१ **किमोऽत् ५ । ३ । १२ ॥**

वाग्रहणमपकृष्यते । सप्तम्यन्तात्किमोऽद्वा स्यात् । पक्षे त्रल् ॥

१२०२. **क्वाति ७।२।१०५॥**

किमः क्वादेशः स्यादति । क्व । कुत्र ॥

१२०३. **इतराभ्योऽपि दृश्यन्ते ५।३।१४॥**

---

**कुत्र**– कस्मिन् (के मा) यो विग्रहमा 'किम्+ङि'देखि "सप्तम्यास्त्रल्"ले त्रल् प्रत्यय विभक्तिलुक्, "कु तिहोः"ले किम्का स्थानमा कु आदेश भयो, पूर्ववत् प्रक्रिया भयो, 'कुत्र' सिद्ध भयो ।

**यत्र**– यस्मिन् (जहाँ) यो अर्थमा 'यद्+ङि'देखि "सप्तम्यास्त्रल्"ले त्रल् प्रत्यय विभक्तिलुक्, अत्व, पररूप आदि पूर्ववत् भयो, 'यत्र' सिद्ध भयो ।

**तत्र**– तस्मिन् (त्यहाँ) यस विग्रहमा 'तद्+ङि'देखि प्रकृत सूत्रले त्रल् प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भयो, 'तत्र' सिद्ध भयो ।

**बहुत्र**– बहुषु इति (धेरैमा) यस विग्रहमा 'बहु+सुप्'देखि प्रकृत सूत्रले त्रल् प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भयो, 'बहुत्र' सिद्ध भयो । यहाँ किम्, यद् आदि शब्दमा सप्तमीको एकवचनान्त विग्रह राखेर रूप सिद्ध गरियो, द्विवचनान्त, बहुवचनान्त भएमा पनि ती शब्ददेखि त्रल् प्रत्यय हुन्छ र कुत्र आदि यिनै रूप बन्दछन् ।

जस्तै :–

कस्मिन्, कयोः, केषु, वा कुत्र । यस्मिन्, ययोः, येषु वा यत्र ।

तस्मिन्, तयोः, तेषु वा तत्र ।

**इदम इति**– सप्तम्यन्त इदम् शब्ददेखि ह प्रत्यय होस् । यो त्रल् प्रत्ययको अपवाद हो ।

**इह**– अस्मिन् (यहाँ) यो विग्रहमा इदम् शब्ददेखि "सप्तम्यास्त्रल्"ले पाएको त्रल् प्रत्ययलाई बाधेर "इदमो हः"ले ह प्रत्यय, विभक्तिलुक् भयो, 'इदम्+ह' भयो, "इदम इश्"ले इश् आदेश भयो, 'इह' भयो, सु आयो, लुक् भयो, 'इह' सिद्ध भयो ।

**किमोऽदिति**– "वा ह चच्छन्दसि"बाट वा ग्रहण अपकर्ष गरेर ल्याइन्छ ।

सप्तम्यन्त किम् शब्ददेखि अत् प्रत्यय विकल्पले होस् ।

**पक्ष इति**– एक पक्षमा त्रल् पनि हुन्छ ।

**क्वातीति**– किम् शब्दका स्थानमा क्व आदेश होस्, अत् प्रत्यय पर भएमा ।

**क्व/कुत्र**– कस्मिन् (कहाँ) यो विग्रहमा 'किम्+ङि'देखि "किमोऽत्"ले अत् प्रत्यय विकल्पले भयो, "क्वाति"ले किम् शब्दका स्थानमा क्व आदेश, 'क्व+अ' यहाँ "अतो गुणे"ले पररूप भयो, क्व शब्द बन्यो, एकपक्षे त्रल् प्रत्यय भयो, 'कुत्र' शब्द बन्यो, यी दुवै अव्यय शब्द हुनाले सु आयो, लुक् भयो, 'क्व/कुत्र' सिद्ध भयो ।

**इतराभ्योऽपीति**– पञ्चमी र सप्तमीदेखि भिन्न विभक्त्यन्तबाट पनि तसिल् आदि प्रत्यय देखिन्छन् ।

---

पञ्चमीसप्तमीतरविभक्त्यन्तादपि तसिलादयो दृश्यन्ते । दृशिग्रहणाद्भवदादियोग एव । स भवान् । ततो भवान् । तत्र भवान् । तं भवन्तम् । ततो भवन्तम् । तत्र भवन्तम् । एवं दीर्घायुः । देवानां प्रियः । आयुष्मान् ॥

१२०४. **सर्वैकान्यकिंयत्तदः काले दा ५।३।१५॥**

सप्तम्यन्तेभ्यः कालार्थेभ्यः स्वार्थे दा स्यात् ॥

१२०५. **सर्वस्य सोऽन्यतरस्यां दि ५।३।६॥**

दादौ प्राग्दिशीये सर्वस्य सो वा स्यात् । सर्वस्मिन् काले सदा । सर्वदा । एकदा । अन्यदा । कदा । यदा । तदा । काले । किम् ? सर्वत्र देशे ॥

१२०६. **इदमो र्हिल् ५।३।१६॥**

सप्तम्यन्तात् काल इत्येव ॥

---

(वा) दृशि ग्रहण गरेकोले अर्थात् दृश्यन्ते भनेकोले भवत् आदि शब्दको योगमा मात्र यी प्रत्यय हुन्छन् ।

**स भवान्** (त्यहाँ हजूर) यो प्रथमान्तको अर्थ देखाउन राखिएको छ । यही अर्थमा अर्थात् प्रथमान्तको अर्थमा तद् शब्ददेखि तसिल् प्रत्यय, त्रल् प्रत्यय भएर ततो भवान् भयो, तत्र भवान् पनि भयो । त भवन्तम् (त्यहाँ हजुरलाई) यो द्वितीयान्तको अर्थ देखाउन राखिएको छ । द्वितीयान्तको अर्थमा पनि तसिल् प्रत्यय, त्रल् प्रत्यय भएर ततो भवन्तम्, तत्र भवन्तम् पनि भयो ।

**एवमिति**– यस्तै स दीर्घायुः (त्यो दीर्घायु होस्) यो अर्थमा- ततो दीर्घायुः, तत्र दीर्घायु, यी रूप हुन्छन् । स देवानां प्रिय (उहाँ देवताका प्यारा भक्त) यो अर्थमा ततो देवानां प्रियः, तत्र देवाना प्रियः यी रूप हुन्छन् । यस्तै आयुष्मत् शब्दको प्रयोगमा पनि जान्नू ।

**सर्वैकान्येति**– सप्तम्यन्त कालवाचक सर्व, एक, अन्य, किम्, यद्, तद् शब्ददेखि स्वार्थमा दाप्रत्यय होस् ।

**सर्वस्येति**– दकार आदिमा हुने प्राग्दिशीय प्रत्यय पर भएमा सर्व शब्दका स्थानमा स आदेश विकल्पले होस् ।

**सदा सर्वदा**– सर्वस्मिन्काले (सबै समयमा) यो विग्रहमा 'सर्व+ङि'देखि "सर्वैकान्यकिंयत्तदः०"ले दा प्रत्यय, विभक्तिलुक् भयो, "सर्वस्य सोऽन्यतरस्यां दि"ले सर्वका स्थानमा वैकल्पिक स आदेश भयो, 'सदा' भयो, स आदेश नभएको पक्षमा 'सर्वदा' भयो । यी दुवै शब्ददेखि सु आयो, लुक् भयो । 'सदा सर्वदा' यस्तै रहे । यस्तै प्रकारले- एकस्मिन्काले यो अर्थमा एकदा, अन्यस्मिन् काले यो अर्थमा अन्यदा, कस्मिन् काले यो अर्थमा कदा, यस्मिन् काले यो अर्थमा यदा, तस्मिन् काले यो अर्थमा तदा । यी रूप हुन्छन् । यहाँ दा यो विभक्ति पर हुनाले अन्यद् शब्दका स्थानमा अत्व, पररूप र किम् शब्दका स्थानमा क आदेश हुन्छ ।

**काले किमिति**– कालवाचक, सर्व एक आदि शब्ददेखि किन भनेको ? देशवाचक सर्व आदि शब्ददेखि नहोस् भनेर, त्यसैले सबै देशमा भन्दा यहाँ दा प्रत्यय भएन त्रल् प्रत्यय भयो र 'सर्वत्र देशे' यस्तो रूप भयो ।

**इदम इति**– कालवाचक सप्तम्यन्त शब्ददेखि र्हिल् प्रत्यय होस् स्वार्थमा ।

**१२०७. एतेतौरथोः ५।३।४॥**

इदम्शब्दस्य एत इत् इत्यादेशौ स्तो रेफादौ थकारादौ च प्राग्दिशीये परे। अस्मिन् काले एतर्हि। काले किम् ? इह देशे॥

**१२०८. अनद्यतने र्हिलन्यतरस्याम् ५।३।२१॥**

कर्हि, कदा। यर्हि, यदा। तर्हि, तदा॥

**१२०९. एतदः ५।३।५॥**

एत इत् एतौ स्तोरेफादौ थादौ च प्राग्दिशीये। एतस्मिन् काले एतर्हि॥

**१२१०. प्रकारवचने थाल् ५।३।२३॥**

प्रकारवृत्तिभ्यः किमादिभ्यस्थाल् स्यात् स्वार्थे। तेन प्रकारेण तथा। यथा॥

---

**एतेतौ रथ इति**– इदम् शब्दका स्थानमा एत र इत् आदेश क्रमैले होऊन् रेफ आदिमा हुने र थकार आदिमा हुने प्राग्दिशीय प्रत्यय पर भएमा। र्हिल् प्रत्ययको लकार, इत्संज्ञा भएर लोप हुन्छ।

**एतर्हि**– अस्मिन्काले (यो समयमा) यस विग्रहमा 'इदम+ङि'देखि "इदमो र्हिल्"ले र्हिल् प्रत्यय भयो, "एतेतौ रथोः"ले इदम्का स्थानमा एत आदेश भयो, विभक्तिलुक् आदि सबै प्रक्रिया भयो, 'एतर्हि' सिद्ध भयो।

**काले किमिति**– "सर्वैकान्य०" यो सूत्रमा काले-कालवाचक किन भन्नु ? कालवाचक न भन्ने हो भने देशवाचक शब्द देखि पनि र्हिल् प्रत्यय होला, सो नहोस् भनेर कालवाचक इदम् शब्द भनियो। अतः इह देशे (यो ठाउँमा) यस विग्रहमा यहाँ देशवाचक इदं शब्द छ र, र्हिल् प्रत्यय भएन ह प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भयो, 'इह देशे' सिद्ध भयो।

**अनद्यतने र्हिलिति**– अनद्यतन कालबोधक सप्तम्यन्त किम् आदि शब्ददेखि र्हिल् प्रत्यय विकल्पले होस्।

**कर्हि/कदा**– कस्मिन्काले (कुन समयमा) यस विग्रहमा 'किम्+ङि'देखि अनद्यतन कालको विवक्षामा "अनद्यतने र्हिलन्यतरस्याम्"ले र्हिल् प्रत्यय भयो, विभक्तिको लुक् भयो, 'किम्+र्हिल्' यहाँ किम्का स्थानमा "किमःकः"ले क आदेश भयो, सु आयो, लुक् भयो, 'कर्हि' सिद्ध भयो। र्हिल् नभएको पक्षमा दा प्रत्यय क आदेश भयो, सु आयो, लुक् भयो, 'कदा' सिद्ध भयो। यस्तै प्रकारले यस्मिन् काले यो विग्रहमा 'यर्हि/यदा'। तस्मिन् काले यस विग्रहमा तर्हि/तदा यी शब्द बन्दछन्।

**एतद् इति**– एतद् शब्दका स्थानमा एत र इत् आदेश क्रमैले होऊन्, रेफ आदिमा हुने र थकार आदिमा हुने प्राग्दिशीय प्रत्यय पर भएमा।

**एतर्हि**– एतस्मिन् काले (यो समयमा) यो विग्रहमा 'एतद्+ङि'देखि "अनद्यतने र्हिलन्यतरस्याम्"ले र्हिल् प्रत्यय भयो, "एतदः"ले एतद्का स्थानमा एत आदेश भयो, सु आयो, लुक् भयो, 'एतर्हि' सिद्ध भयो।

**प्रकारवचन इति**– प्रकारवाचक सुबन्त किम्आदि शब्ददेखि थाल् प्रत्यय होस् स्वार्थमा।

**तथा**– तेन प्रकारेण (त्यस प्रकारले) यस विग्रहमा 'तद्+टा'देखि "प्रकारवचने०"ले थाल् प्रत्यय भयो, थाल्का लकारको इत्संज्ञा लोप भयो, था, यो विभक्ति हुनाले तद्का दकारको "त्यदादीनामः"ले अत्व पररूप भयो, 'तथा'शब्द बन्यो, सु आयो, लुक् भयो, 'तथा' सिद्ध भयो।

**यथा**– येन प्रकारेण (जुनप्रकारले) यो विग्रहमा 'यद्+टा'देखि "प्रकारवचने"ले थाल् प्रत्यय, विभक्तिलुक् भयो, थाल् प्रत्यय विभक्ति हुनाले त्यो पर भएमा "त्यदादीनामः"ले त्यद्का दकारको अत्व पररूप भयो, 'यथा'शब्द बन्यो, सु आयो, लुक् भयो, 'यथा' सिद्ध भयो।

---

१२११. **इदमस्थमुः ५।३।२४॥**

थालोऽपवादः । **वा.**(एतदोऽपि वाच्यः) । अनेन एतेन वा प्रकारेण इत्थम् ॥

१२१२. **किमश्च ५।३।२५॥**

केन प्रकारेण कथम् ॥

**इति प्रागिदशीयप्रकरणम् ॥१४॥**

---

**इदम इति**– प्रकारअर्थमा रहेको सुबन्त इदम् शब्ददेखि थमु प्रत्यय होस्, स्वार्थमा । यो थमु प्रत्यय थाल्को अपवाद हो ।

**(वा) एतद इति**– सुबन्त एतद् शब्ददेखि पनि थमु प्रत्यय होस् भन्नु ।

**इत्थम्**– अनेन एतेन वा प्रकारेण (यस प्रकारले) यो विग्रहमा "प्रकारवचनेथाल्"लाई बाधेर 'इदम्+टा'देखि "इदमस्थमुः" यो सूत्रले र 'एतद्+टा'देखि "एतदोऽपि वाच्यः" यो वार्तिकले थमु प्रत्यय भयो, "एतेतौ रथोः"ले इदम्का स्थानमा इत् आदेश भयो, "एतदः"ले एतद् शब्दका स्थानमा इत् आदेश भयो, उभयत्र विभक्तिलुक् भयो, पूर्ववत् प्रक्रिया भयो, दुवै शब्दबाट 'इत्थम्'शब्द सिद्ध भयो ।

**किमश्चेति**– प्रकारवृत्ति सुबन्त किम् शब्ददेखि थमु प्रत्यय होस् ।

**कथम्**– केन प्रकारेण (कुन प्रकारले) यस विग्रहमा 'किम्+टा'देखि थमु प्रत्यय भयो, विभक्तिलुक् भयो । प्राग्दिशो विभक्तिले विभक्तिसंज्ञा भयो र किम्का स्थानमा "किमः कः"ले क आदेश आदि प्रक्रिया भयो, 'कथम्' सिद्ध भयो ।

थाल् प्रत्यय द्वितीयान्त आदि सबै सुबन्तदेखि हुन्छ तर प्रथमान्तदेखि हुँदैन । तत्त्वबोधिनी टीकामा "प्रथमान्तात्तु नभर्वात स प्रकारस्तथा इत्यनभिधानात्" भनेको छ । थमु प्रत्यय पनि थाल् प्रत्ययको अर्थमा नै हुन्छ ।

**प्राग्दिशीय प्रकारण सकियो ।**

-----------------

## अथ प्रागिवीयाः

**१२१३. अतिशायने तमबिष्ठनौ ५।३।५५॥**

अतिशयविशिष्टार्थवृत्तेः स्वार्थ एतौ स्तः । अयमेषामतिशयेनाढ्यः आढ्यतमः । लघुतमः, लघिष्ठः ॥

**१२१४. तिङश्च ५।३।५६॥**

तिङन्तादतिशये द्योत्ये तमप् स्यात् ॥

**१२१५. तरप्तमपौ घः १।१।२२॥**

एतौ घसंज्ञौ स्तः ॥

---

**अतिशायने इति**– अतिशयविशिष्ट अर्थमा वर्तमान [१५२] सुबन्तदेखि तमप् प्रत्यय होस्, स्वार्थमा । अतिशायन शब्द अतिउपसर्ग पूर्वमा हुने शी धातुदेखि ल्युट् प्रत्यय गरेर 'अतिशयन'शब्द बन्दछ । सूत्रमा निपातन गरेकोले दीर्घ भयो । 'अतिशयन', 'अतिशायन' यी दुवै शब्दको अतिशय अर्थ हुन्छ । अतिशय अर्थ प्रकृत्यर्थको विशेषण हुन्छ । तमप् प्रत्यय र इष्ठन् प्रत्यय उसका द्योतक हुन्छन् । तमप् प्रत्यय र इष्ठन् प्रत्ययको योगले विशेषणीभूत अतिशय अर्थको प्रतीति हुन्छ ।

दुईमा यौटाको अतिशय निर्धारण गर्दा "द्विवचनविभज्योपदे तरबीयसुनौ"ले तरप्प्रत्यय र ईयसुन् प्रत्यय हुन्छन् । धेरैमा एउटाको अतिशय निर्धारण गर्दा "अतिशायने तमबिष्ठनौ"ले तमप् प्रत्यय र इष्ठन् प्रत्यय हुन्छन् ।

**आढ्यतमः**– अयम् एषाम् अतिशयेन आढ्यः (यो यिनीहरू मध्येमा अतिशय धनी) यो विग्रहमा 'आढ्य+सु'देखि "अतिशायने तमबिष्ठनौ"ले तमप् प्रत्यय भयो, सु को "सुपो धातुप्रातिपदिकयोः"ले लुक् भयो, 'आढ्यतम'शब्द बन्यो, त्यसदेखि सु आयो, 'आढ्यतमः' सिद्ध भयो ।

यहाँ आढ्य शब्दको धनी भन्ने अर्थ हो । तम शब्दको अर्थ अतिशय हो । इष्ठन् र ईयसुन् प्रत्यय [१५३] गुणवाचकशब्ददेखिमात्र हुन्छन् भनेकोले आढ्य शब्ददेखि इष्ठन् प्रत्यय हुँदैन ।

**लघुतमः/लघिष्ठः**– अयम् एषाम् अतिशयेन लघुः (यो यिनीहरूमा अतिशय हल्का) यस विग्रहमा अतिशयविशिष्ट अर्थमा वर्तमान सुबन्त 'लघु+सु'देखि "अतिशायने०"ले तमप् प्रत्यय, विभक्तिलुक् भयो र 'लघुतम'शब्द बन्यो, त्यसदेखि सु आयो, 'लघुतमः' सिद्ध भयो । इष्ठन् प्रत्यय भएको पक्षमा 'लघु+इष्ठ' यहाँ भसंज्ञा भएपछि, "टेः" यो सूत्रले भसंज्ञक टि-लघुका उकारको लोप भयो, 'लघिष्ठ'शब्द बन्यो, त्यसदेखि सु आयो, 'लघिष्ठः' सिद्ध भयो ।

**तिङश्चेति**– तिङन्तदेखि पनि अतिशय अर्थ द्योत्य भएमा तमप् प्रत्यय होस् ।

**तरप्तमपाविति**– तरप् प्रत्यय र तमप् प्रत्यय घसंज्ञक होऊन ।

---

१५२ 'सुबन्तात्तमप्' "सुपोधातुप्रातिपदिकयोः" इति सुपो लुक्' इति तत्त्वबोधिनीकारः ।

१५३ अजादी गुणवचनादेव ५।३।५८" अष्टाध्यायीसूत्रपाठ ।

१२१६. **किमेत्तिङव्ययघादाम्वद्रव्यप्रकर्षे ५।४।११॥**

किम एदन्तात्तिङोऽव्ययाच्च यो घस्तदन्तादामु: स्यान्न तु द्रव्यप्रकर्षे । किन्तमाम् । प्राह्णेतमाम् । पचतितमाम् । उच्चैस्तमाम् । द्रव्यप्रकर्षे तु उच्चैस्तमस्तरुः ॥

१२१७. **द्विवचनविभज्योपपदे तरबीयसुनौ ५।३।५७॥**

द्वयोरेकस्यातिशये विभक्तव्ये चोपपदे सुप्तिङन्तादेतौ स्तः । पूर्वयोरपवादः । अयमनयोरतिशयेन लघुः, लघुतरो लघीयान् ॥

---

**किमेदिति**– किम् शब्ददेखि, एकारान्त शब्ददेखि, तिङन्तदेखि र अव्ययदेखि पर रहेको जो, घसंज्ञक प्रत्यय छ, तदन्त शब्ददेखि आम् प्रत्यय होस् द्रव्यको प्रकर्ष बुझिँदामा त नहोस् ।

**किन्तमाम्**– अतिशयने किम् (अतिशय के ?) यो विग्रहमा 'किम्+सु'देखि अतिशय अर्थ बुझाउँन तमप् प्रत्यय भयो र किन्तम भयो, "किमेत्तिङव्यय०"ले आमु प्रत्यय भयो, 'किन्तम+आम्' भयो । "यस्येति च"ले किन्तमका अन्त्य अकारको लोप भयो, 'किन्तमाम्'शब्द बन्यो, यो अव्यय हुनाले सु आयो, लुक् भयो, 'किन्तमाम्' सिद्ध भयो ।

**प्राह्णेतमाम्**– अतिशयेन प्राह्णे (अतिशय पूर्वाह्णमा) यस विग्रहमा 'प्राह्ण+ङि'देखि तमप् प्रत्यय भयो, "घकालतनेषु कालनाम्नः"ले ङि को अलुक् भएर 'प्राह्णेतम'शब्द भयो, 'प्राह्णेतम+ङि' देखि "किमेत्तिङव्यय"ले आमु प्रत्यय भयो, ङिको लुक् भयो, 'प्राह्णेतम+आम्' भयो, आकारको लोप भयो, 'प्राह्णेतमाम्' सिद्ध भयो ।

**पचतितमाम्**– अतिशयेन पचति (अत्यन्त पकाउँछ) यस विग्रहमा "तिङश्च" यो सूत्रले तमप् प्रत्यय भयो, 'पचतितम' भयो, त्यसदेखि "किमेत्तिङव्यय०"ले आमु भयो, आकारलोप भयो, 'पचतितमाम्' यो अव्यय शब्द बन्यो, सु आयो, लुक् भयो, 'पचतितमाम्' सिद्ध भयो ।

**उच्चैस्तमाम्**– अतिशयेन उच्चैः (अत्यन्त ऊँचो तरिकाले) यस विग्रहमा उच्चैस् शब्ददेखि "अतिशायने तमबिष्ठनौ"ले तमप् प्रत्यय भयो, "किमेत्तिङव्यया०"ले आमु प्रत्यय भयो, अकारलोप भयो, 'उच्चैस्तमाम्' यो अव्यय शब्द बन्यो, सु आयो, लुक् भयो, 'उच्चैस्तमाम्' सिद्ध भयो ।

**द्रव्यप्रकर्षे त्विति**– द्रव्यप्रकर्ष बुझिएमा त आमु प्रत्यय हुँदैन, जस्तै–अतिशयेन उच्चै ( अतिशय ऊँचो) यस विग्रहमा उच्चैस्तमस्तरुः, उच्चैस्तरस्तरुः (अति अग्लो रूख) भयो । यहाँ 'उच्चैस्तमाम्', 'उच्चस्तराम्' भएन । तरुशब्द द्रव्यवाचक हो ।

**द्विवचनेति**– दुई मध्येका यौटाको अतिशय बुझाउने पद र विभाग गरेर उत्कर्ष बुझाउने पद, उपपद भएमा तद्धर्मवाचक सुबन्त र तत्क्रियावाचक तिङन्त देखि तरप् प्रत्यय र ईयसुन् प्रत्यय होऊन् ।

**पूर्वयोरिति**– तमप् प्रत्यय र इष्ठन् प्रत्ययको अपवाद हो ।

दुई मध्ये एकको उत्कर्ष बताउँदा तरप् प्रत्यय र ईयसुन् प्रत्यय हुन्छन् भने, धेरै मध्ये एकको उत्कर्ष बताउँदा तमप् प्रत्यय र इष्ठन् प्रत्यय हुन्छन् । 'अयमनयोरतिशयेन लघुः' यो वाक्यमा दुई मध्ये एकको अतिशय बुझिन्छ । 'उदीच्याः प्राच्येभ्यः पटुतराः' यस वाक्यमा धेरैमा धेरैको अतिशय छ भन्ने शङ्का नगर्नू, किनकि उदीच्य र प्राच्य यी दुई समूह छन् र दुईमा एकको अतिशय नै यहाँ बुझिन्छ ।

**लघुतरः/लघीयान्**– अयमनयोरतिशयेन लघु (यो यी दुईमा अत्यन्त हल्का) यस विग्रहमा अयम्, अनयोः यी दुवै उपपद छन्, लघुत्वको अतिशय अर्थ बुझिँदामा द्विवचन "विभज्योपपदे०"ले धर्मवाचक सुबन्त 'लघु+सु'देखि तरप् प्रत्यय, विभक्तिलुक् भयो, 'लघुतर'शब्द बन्यो, त्यसदेखि

उदीच्याः प्राच्येभ्यः पटुतराः पटीयांसः ॥

**१२१८. प्रशस्यस्य श्रः ५।३।६०॥**

अस्य श्रादेशः स्यादजाद्योः परतः ॥

**१२१९. प्रकृत्यैकाच् ६।४।१६३॥**

इष्ठादिष्वेकाच् प्रकृत्या स्यात् । श्रेष्ठः, श्रेयान् ॥

**१२२०. ज्य च ५।३।६१॥**

प्रशस्यस्य ज्यादेशः स्यादिष्ठेयसोः । ज्येष्ठः ॥

**१२२१. ज्यादादीयसः ६।४।१६०॥**

---

सु आयो, 'लघुतरः' सिद्ध भयो । ईयसुन् प्रत्यय भएमा 'लघु+सु+ईयसुन्' यहाँ विभक्तिलुक्, "टेः" ६।४।१५५ले टिलोप भयो, 'लघीयस्'शब्द बन्यो, त्यसदेखि सु आयो, 'लघीयान्' सिद्ध भयो ।

**पटुतराः/पटीयांसः**– उदीच्याः प्राच्येभ्यः पटवः (उदीच्यहरू प्राच्यभन्दा चतुरा) यस विग्रहमा उदीच्याः, प्राच्येभ्यः यी दुवै उपपद छन्, पटुत्व धर्मको अतिशय अर्थ बुझिँदामा धर्मवाचक शब्द 'पटु+जस्'देखि तरप् प्रत्यय, विभक्तिलुक् भयो, 'पटुतर'शब्द बन्यो, त्यसदेखि जस् आयो, 'पटुतराः' सिद्ध भयो । ईयसुन् प्रत्यय भएमा 'पटु+जस्' ईयसुन् यहाँ विभक्तिलुक्, टिलोप भयो, 'पटीयस्'शब्द बन्यो, त्यसदेखि जस् आयो 'पटीयांसः' सिद्ध भयो ।

प्रयोग- उदीच्याः प्राच्येभ्यः पटुतराः पटीयांसो वा (उत्तरका मानिसहरू पूर्वतर्फका मानिस भन्दा ज्यादै चतुरा छन्)

तिङन्तदेखि तरप् प्रत्यय हुन्छ, ईयसुन् प्रत्यय हुँदैन । "अजादी गुणवचनादेव"ले निषेध गर्छ तरप् प्रत्यय भएमा आमु प्रत्यय पनि हुन्छ र पचतितराम् आदि रूप हुन्छन्, जस्तै

अयमनयोः पचतितराम् (यी दुई मध्येमा यसले अतिशय पकाउँछ),

पाश्चात्त्याः प्राच्येभ्यो मोदन्तेतराम् (पूर्वतर्फका मानिसभन्दा पाश्चात्त्यहरू धेरै खुशी छन् )

**प्रशस्येति**– प्रशस्य शब्दका स्थानमा श्रआदेश होस् अच्आदिमा हुने प्रत्यय पर भएमा ।

**प्रकृत्यैकाजिति**– इष्ठन् आदि प्रत्यय पर भएमा एकाच् शब्द प्रकृति भावले रहोस् ।

**श्रेष्ठः**– अयमेषामतिशयेन प्रशस्यः (यो यिनीहरूमा अत्यन्त प्रशंसनीय छ) यस विग्रहमा "अतिशायने तमबिष्ठनौ"ले 'प्रशस्य+सु'देखि इष्ठन् प्रत्यय, विभक्तिलुक् भयो, 'प्रशस्य+इष्ठ' यहाँ "प्रशस्यस्य श्रः"ले प्रशस्यका स्थानमा श्र आदेश भयो, 'श्र+इष्ठ' भयो, "टेः"ले टिलोप पाएकोमा "प्रकृत्यैकाच्"ले निषेध भयो, गुण भयो, 'श्रेष्ठ'शब्द बन्यो, त्यसदेखि सु आयो, 'श्रेष्ठः' सिद्ध भयो ।

**श्रेयान्**– अयमनयोः प्रशस्यः (यी दुईमा यो प्रशंसनीय) यो विग्रहमा 'प्रशस्य+सु'देखि "द्विवचनविभज्योपपदे०"ले ईयसुन् प्रत्यय, विभक्तिको लुक् भयो, प्रशस्यका स्थानमा श्र आदेश, पूर्ववत् प्रकृतिभाव, गुण भयो, 'श्रेयस्'शब्द बन्यो, त्यसदेखि सु आयो, 'श्रेयान्' सिद्ध भयो ।

**ज्य चेति**–प्रशस्य शब्दका स्थानमा ज्य आदेश पनि होस् इष्ठन् प्रत्यय र ईयसुन् प्रत्यय पर भएमा ।

**ज्येष्ठः**– अयमेषामतिशयेन प्रशस्यः (यो यिनीहरूमा ज्यादा प्रशंसनीय) यस विग्रहमा 'प्रशस्य+सु'देखि "अतिशायने०"ले इष्ठन् प्रत्यय भयो, "ज्य च"ले प्रशस्य शब्दका स्थानम ज्य आदेश भयो, "प्रकृत्यैकाच्"ले टिलोप निषेध भयो, गुण भयो, 'ज्येष्ठ'शब्द बन्यो, त्यसदेखि सु आयो, 'ज्येष्ठः' सिद्ध भयो ।

**ज्यादादीति**– ज्य शब्ददेखि पर रहेका ईयसुन् प्रत्ययका स्थानमा आकार आदेश होस् ।

"आदेः परस्य" । ज्यायान् ॥

**१२२२. बहोर्लोपो भू च बहोः ६।४।१५८॥**

बहोः परयोरिमेयसोर्लोपः स्याद् बहोश्च भूरादेशः । भूमा । भूयान् ॥

**१२२३. इष्ठस्य यिट् च ६।४।१५९॥**

बहोः परस्य इष्ठस्य लोपः स्याद् यिडागमश्च । भूयिष्ठः ॥

**१२२४. विन्मतोर्लुक् ५।३।६५॥**

विनो मतुपश्च लुक् स्यादिष्ठेयसोः ।

---

आयो, 'ज्येष्ठः' सिद्ध भयो ।

**ज्यादादीति**– ज्य शब्ददेखि पर रहेका ईयसुन् प्रत्ययका स्थानमा आकार आदेश होस् ।

**आदेरिति**– "आदेः परस्य" यो सूत्र लाग्छ ।

**ज्यायान्**– अयमनयोरतिशयेन प्रशस्यः (यो यी दुईमा अतिशयले प्रशंसनीय) यस विग्रहमा 'प्रशस्य+सु'देखि "द्विवचनविभज्योपपदे०"ले ईयसुन् प्रत्यय भयो, प्रशस्य शब्दका स्थानमा ज्य आदेश, प्रकृतिभाव, "ज्यादादीयसः"ले "आदेः परस्य" लगाएर ईयसुन् प्रत्ययका ईकारका स्थानमा आकार आदेश भयो, 'ज्य+आयस्' यहाँ टिलोप निषेध भएपछि सवर्णदीर्घ भयो, 'ज्यायस्'शब्द बन्यो, त्यसदेखि सु आयो, 'ज्यायान्' सिद्ध भयो ।

'श्रेयान् श्रेष्ठः पुष्कलः स्यात् सत्तमश्चातिशोभने' (अमरकोश)
'त्रिषु ज्येष्ठेऽतिशस्तेऽपि' (अमरकोश)
'वृद्धप्रशस्ययोर्ज्यायान्' (अमरकोश)

**बहोर्लोपो भूचेति**– बहु शब्ददेखि पर रहेका इमनिच् प्रत्यय र ईयसुन् प्रत्ययको लोप होस्, बहु शब्दका स्थानमा भू आदेश पनि होस् ।

**भूमा**– बहोर्भावः (बहुत्व) यस अर्थमा 'बहु+ङस्'देखि "पृथ्वादिभ्य इमनिज्वा"ले इमनिच्प्रत्यय, विभक्तिलुक् भयो, "बहोर्लोपो भू च बहोः"ले "आदेः परस्य" लगाएर इमनिच् प्रत्ययका इकारको लोप भयो, बहु शब्दका स्थानमा भू आदेश भयो, 'भूमन्'शब्द बन्यो, त्यसदेखि सु आयो, 'भूमा' सिद्ध भयो ।

**भूयान्**– अयमनयोरतिशयेन बहुः (यी दुई मध्येमा यो अतिशय अधिक) यो अर्थमा 'बहु+सु'देखि ईयसुन् प्रत्यय, विभक्तिलुक् भयो, "बहोर्लोपो भू च बहोः"ले "आदेः परस्य" लगाएर ईयसुन्का ईकारको लोप भयो, बहुका स्थानमा भू आदेश भयो, 'भूयस्'शब्द बन्यो, सु आयो, 'भूयान्' सिद्ध भयो । पुंलिङ्गमा- भूयान्, भूयांसौ, भूयांसः आदि, स्त्रीलिङ्गमा- भूयसी, भूयस्यौ, भूयस्यः आदि, नपुंसकलिङ्गमा- भूयः, भूयसी, भूयांसि आदि रूप हुन्छन् ।

**इष्ठस्येति**– बहु शब्ददेखि पर रहेका इष्ठन् प्रत्ययको लोप होस्, यिट् आगम होस्, बहु शब्दका स्थानमा भू आदेश पनि होस् । "आदेः परस्य" लगाएर इष्ठन्का इकारको लोप हुन्छ । यिट् आगममा टकारको इत्संज्ञा, लोप हुन्छ, 'यि'बाँकी रहन्छ ।

**भूयिष्ठः**– अयमेषामतिशयेन बहुः (यो यिनीहरूमा अत्यन्त अधिक) यो अर्थमा 'बहु+सु'देखि "अतिशायने तमबिष्ठनौ"ले इष्ठन् प्रत्यय भयो, "इष्ठस्य यिट् च"ले ईयसुन्का ईकारको लोप र इष्ठन् प्रत्ययको यिट् आगम भयो, 'बहु+यिष्ठ' भयो, बहु शब्दका स्थानमा भू आदेश भयो, 'भूयिष्ठ' शब्द बन्यो, त्यसदेखि सु आयो, 'भूयिष्ठः' सिद्ध भयो ।

**विन्मतोरिति**– इष्ठन् प्रत्यय र ईयसुन् प्रत्यय पर भएमा विन् प्रत्यय र मतुप् प्रत्ययको लुक् होस् । यही सूत्र ज्ञापक हुनाले गुणवाचक शब्ददेखि पनि इष्ठन्, ईयसुन् प्रत्यय हुन्छन् । अर्थात्

अतिशयेन स्रग्वी स्रजिष्ठः । स्रजीयान् । अतिशयेन त्वग्वान् त्वचिष्ठः । त्वचीयान् ॥

१२२५. **ईषदसमाप्तौ कल्पब्देश्यदेशीयरः ५।३।६७॥**

ईषदूनो विद्वान् विद्वत्कल्पः । विद्वद्देश्यः । विद्वद्देशीयः । पचतिकल्पम् ॥

१२२६. **विभाषा सुपो बहुच् पुरस्तात्तु ५।३।६८॥**

ईषदसमाप्तिविशिष्टेऽर्थे सुबन्ताद् बहुज्वा स्यात्स च प्रागेव न तु परतः। ईषदूनः पटुर्बहुपटुः । पटुकल्पः ।

---

**स्रजिष्ठः**– अयमेतेषामतिशयेन स्रग्वी (यो यिनीहरूमा अतिशय माला भएको) यस विग्रहमा 'स्रग्विन्+सु'देखि उक्त सूत्रले इष्ठन् प्रत्यय भयो, "विन्मतोर्लुक्"ले विन् प्रत्ययको लुक् भयो, "निमित्तापाये नैमितिकस्याप्यपायः" लगाएर गकारको जकार भयो, 'स्रजिष्ठ' शब्द बन्यो, त्यसदेखि सु आयो, 'स्रजिष्ठः' सिद्ध भयो ।

**स्रजीयान्**– अयमनयोरतिशयेन स्रग्वी (यी दुई मध्येमा यो अतिशय माला भएको) यस विग्रहमा 'स्रग्विन्+सु'देखि उक्त सूत्रले ईयसुन् प्रत्यय, विभक्तिलुक्, "विन्मतोर्लुक्"ले विन् प्रत्ययको लुक्, "निमित्तापाये०" लगाएर गकारको जकार भयो, 'स्रजीयस्' शब्द बन्यो, सु आयो, 'स्रजीयान्' सिद्ध भयो । इष्ठन् प्रत्यय र ईयसुन् प्रत्यय पर भएमा पदसंज्ञा नहुने हुनाले जकारको कुत्व हुँदैन ।

**त्वचिष्ठः**– अयमेतेषामतिशयेन त्वग्वान् (यो यिनीहरूमा अतिशय छाला भएको) यस अर्थमा 'त्वग्वत्+सु'देखि उक्त सूत्रले पूर्ववत् इष्ठन् प्रत्यय, विभक्तिलुक्, मतुप् प्रत्ययको लुक्, गकारको चकार भयो, 'त्वचिष्ठ' शब्द बन्यो, त्यसदेखि सु आयो, 'त्वचिष्ठः' सिद्ध भयो ।

**त्वचीयान्**– अयमनयोरतिशयेन त्वग्वान् (यो यी दुईमा अतिशय छाला भएको) यस विग्रहमा 'त्वग्वत्+सु'देखि उक्त सूत्रले ईयसुन् प्रत्यय भयो, विभक्तिलुक्, मतुप् प्रत्ययको लुक् भयो गकारको चकार भयो, 'त्वचीयस्' शब्द बन्यो, त्यसदेखि सु आयो, 'त्वचीयान्' सिद्ध भयो ।

**ईषदसमाप्ताविति**– अलिकति कमी भन्ने अर्थमा विद्यमान सुबन्त र तिङन्तदेखि कल्पप्, देश्य, देशीयर् यी प्रत्यय होऊन् ।

**विद्वत्कल्पः**– इषदूनो विद्वान् (अलिकति कमी विद्वान्) यस विग्रहमा 'विद्वस्+सु'देखि "ईषदसमाप्तौ कल्पब्देश्यदेशीयरः" यो सूत्रले कल्पप् प्रत्यय भयो, सुको लोप भयो, 'विद्वस्+कल्प' "वसुस्रंसु०"ले सकारका स्थानमा दकार भयो, दकारको "खरिच"ले चर्त्व भएर तकार भयो, 'विद्वत्कल्प' शब्द बन्यो, त्यसदेखि सु आयो, 'विद्वत्कल्प :' सिद्ध भयो ।

यही अर्थमा यही सूत्रले देश्य प्रत्यय देशीयर् प्रत्यय र पूर्ववत् प्रक्रिया भएर 'विद्वद्देश्यः', 'विद्वद्देशीयः' यी दुई रूप पनि सिद्ध हुन्छन् ।

**पचतिकल्पम्**– इषदूनं पचति (अलिकति कम पकाउँछ) यस विग्रहमा उक्त सूत्रले 'पचति' यो तिङन्तदेखि कल्पप् प्रत्यय भयो, 'पचतिकल्प' शब्द बन्यो, यो क्रिया हुनाले नपुंसकलिङ्ग र एकत्व रहन्छ अतः नपुंसकलिङ्गमा एकवचन सु आयो, 'पचतिकल्पम्' सिद्ध भयो ।

यहाँ प्रथमान्तमात्र हुन्छ भनेर धेरै भन्छन् 'पचतिकल्पं पश्य' इत्यादि वाक्यमा द्वितीयादि विभक्ति पनि हुन्छन्, तर एकवचन मात्र हुन्छ । यो तत्त्वबोधिनीकारको भनाइ छ ।

विभाषेति- अलिकति समाप्त नभएको भन्ने अर्थमा वर्तमान सुबन्तदेखि बहुच् प्रत्यय, विकल्पले होस्, त्यो प्रकृतिदेखि पूर्वतर्फ होस्, परतिर नहोस् ।

**बहुपटुः/पटुकल्पः**– इषदूनः पटुः (अलिकति कम चतुरो) यस विग्रहमा 'पटु+सु'देखि

सुपः किम् ? यजतिकल्पम् ॥

**१२२७. प्रागिवात्कः ५।३।७०॥**

इवे प्रतिकृताविव्यतः प्राक्काधिकारः ॥

**१२२८. अव्ययसर्वनाम्नामकच् प्राक् टे ५।३।७१॥**

कापवादः । तिङश्चेत्यनुवर्तते ॥

**१२२९. अज्ञाते ५।३।७३॥**

कस्यायमश्वोऽश्वकः । उच्चकैः । नीचकैः

---

"विभाषा सुपो०"ले बहुच् प्रत्यय पूर्वतर्फ भयो, सुको [१५४] प्रातिपदिकत्वात् लुक् भयो, 'बहुपटु'शब्द बन्यो, त्यसदेखि सु आयो, 'बहुपटुः' सिद्ध भयो । बहुच् प्रत्यय नभएको पक्षमा कल्पप् प्रत्यय भएर पूर्ववत् प्रक्रिया भएपछि 'पटुकल्पः' सिद्ध हुन्छ ।

**सुपः किमिति**– सुबन्तदेखि किन भन्नू ? नभन्ने हो भने ईषदूनं यजति यस विग्रहमा यजति यो तिङन्तदेखि बहुच् प्रत्यय होला र बहुयजति यस्तो अनिष्ट रूप सिद्ध होला । सो नहोस् भनेर सुबन्तदेखि भनियो । यहाँ सुबन्त छैन तिङन्त छ र बहुच् प्रत्यय भएन कल्पप् प्रत्यय भयो, पूर्ववत् 'यजतिकल्पम्' सिद्ध भयो ।

**प्रागिवात्क इति**– "इवे प्रतिकृतौ" यो सूत्रदेखि पूर्वसम्म कप्रत्ययको अधिकार गरिन्छ ।

**अव्ययसर्वनाम्नामिति**– अव्यय शब्द, सुबन्त सर्वनामसंज्ञक शब्द र तिङन्तदेखि टिको पूर्वतर्फ अकच् प्रत्यय होस् ।

**कापवाद इति**–यो अकच् प्रत्यय क प्रत्ययको अपवाद हो । अकच्का अच्को इत्संज्ञा, लोप हुन्छ ।

**तिङश्चेति**– "तिङश्च" यो सूत्रबाट 'तिङश्च' यो पदको अनुवृत्ति आउँछ ।

**अज्ञाते**– अज्ञात अर्थमा वर्तमान सुबन्तदेखि क प्रत्यय होस्, अव्यय र सर्वनामसंज्ञक शब्दमा टिदेखि पूर्व अकच् प्रत्यय होस् ।

**अश्वकः**– कस्यायमश्वः (यो कसको घोडा हो ?) यस विग्रहमा 'अश्व+सु'देखि कप्रत्यय भयो, सुको लुक् भयो, 'अश्वक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अश्वकः' सिद्ध भयो । यहाँ घोडा हो **भन्ने ज्ञान** भएपनि यो कसको हो भन्ने ? स्वामित्वसम्बन्धको ज्ञान छैन । अतएव घोडा अज्ञात छ ।

उच्चैस्, नीचैस् आदि शब्द, सर्वनामसंज्ञक शब्द र तिङन्तदेखि केवल स्वार्थमा र अज्ञात, कुत्सित आदि अर्थमा पनि अकच् प्रत्यय हुन्छ ।

**उच्चकैः**– अज्ञातम् उच्चैः (नजानिएको उँचो भन्दा) उच्चैस् शब्दको टिदेखि पूर्व अकच् प्रत्यय भयो, रुत्व, विसर्ग भयो, 'उच्चकैः' सिद्ध भयो । उच्चैस् शब्ददेखि अत्यन्त स्वार्थमा पनि अकच् प्रत्यय भएको प्रयोग देखिन्छ जस्तै-

निवेशयामासिथ हेलयोद्धृतं फणाभृतां छादनमेकमोकसः ।
जगत्त्रयैकस्थपतिस्त्वमुच्चकैरहीश्वरस्तम्भशिरस्सु भूतलम् (माघ १।३४)

**नीचकैः**– अज्ञातम् नीचैः (नजानिएको नीचो) यहाँ नीचैस् शब्ददेखि अकच् प्रत्यय टिदेखि पूर्व भयो, रुत्व, विसर्ग भयो, 'नीचकैः' सिद्ध भयो ।

---

[१५४] यहाँ 'बहुपटु यो तद्धितान्त नहुनाले "अर्थवदधातु०"ले प्रातिपदिकसंज्ञा भएर सुप्को लुक् हुन्छ । पुनः स्वादिप्रत्यय आउँछन्' भन्ने कुरा "कृत्तद्धितसमासाश्च" यो सूत्रको टीकामा तत्वबोधिनीकारले विवरण गरेका छन् । अतः कसै कसैले बहुपटु शब्दलाई प्रातिपदिकसंज्ञा गर्न "कृत्तद्धितसमासाश्च"यो सूत्रमा तद्धितपदको तद्धित प्रत्यय युक्त भन्ने अर्थ गर्नु पर्छ भन्नु भूल हो ।

सर्वकैः । **वा**.(ओकारसकारभकारादौ सुपि सर्वनाम्नष्टेः प्रागकच्, अन्यत्र सुबन्तस्य) । युष्मकाभिः । अस्मकाभिः । युवकयोः । आवकयोः । त्वयका । मयका ॥

१२३०. **कुत्सिते ५।३।७४॥**

कुत्सितोऽश्वोऽश्वकः ॥

---

**सर्वकैः**– सर्वैरिति अज्ञातैः सर्वैरिति वा (सबैले अथवा नजानेको सबैले) यस विग्रहमा सर्वैः यहाँ अकच् हुँदा टिदेखि पूर्व अकच् भयो, 'सर्वकैः' सिद्ध भयो ।

**(वा)** [१५५] **ओकारेति**– ओकार सकार भकार आदिमा हुने सुप् पर भएमा सर्वनामको टिदेखि पूर्वपट्टि अकच्प्रत्यय होस् अरू ठाउँमा सुबन्तको टिदेखि पूर्वपट्टि अकच् प्रत्यय होस् ।

**युवकयोः, आवकयोः**– अज्ञातयोः युवयोरावयोर्वा (नजानिएका तिमी दुई र हामी दुईको) यस विग्रहमा युवयो, आवयोः यहाँ ओकार आदिमा हुने सुप् पर छ र "ओकारसकारभकारादौ०" यो वार्तिकको सहकारपूर्वक "अव्ययसर्वनाम्नां०"ले सर्वनामको टि- युवको अकार आवको अकार-देखि पूर्वपट्टि अकच् प्रत्यय भयो, 'युवकयोः', 'आवकयोः' सिद्ध भयो ।

**युष्मकासु, अस्मकासु**– युष्मासु अस्मासु यहाँ सकार आदिमा हुने विभक्ति पर छ र "ओकारसकारभकारादौ०" यो वार्तिकको सहकारपूर्वक उक्त सूत्रले सर्वनामकै टिका स्थानमा अकच् प्रत्यय हुँदा 'युष्मकासु', 'अस्मकासु' यी रूप सिद्ध भए ।

**युष्मकाभिः, अस्मकाभिः**– युस्माभिः, अस्माभिः यहाँ पनि भकारादि विभक्ति पर छ र पूर्ववत् सर्वनामको टि देखि पूर्व अकच् प्रत्यय भयो, 'युष्मकाभिः', 'अस्मकाभिः' यी दुई रूप सिद्ध भए ।

**त्वयका, मयका**– त्वया, मया यहाँ ओकार सकार भकार आदिमा हुने विभक्ति पर छैन र [१५६] "ओकारसकारभकारादौं०" यो वार्तिकको नियम अनुसार त्वया, मया यो सुबन्तको टि-आदेखि- पूर्वपट्टि अकच् प्रत्यय भयो, 'त्वयका', 'मयका' सिद्ध भयो ।

**कुत्सित इति**– निन्दाविशिष्ट स्वार्थमा वर्तमान सुबन्त देखि कप्रत्यय होस् ।

**अश्वकः**– कुत्सितः अश्वः (निन्दित घोडा) यो विग्रहमा 'अश्व+सु'देखि क प्रत्यय भयो, विभक्तिलुक् भयो, 'अश्वक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अश्वकः' सिद्ध भयो ।

---

[१५५] "अव्ययसर्वनाम्नामकच् प्राक्टेः" यो सूत्रमा "ङ्याप्प्रातिपदिकात्" यो सूत्रबाट 'प्रातिपदिकात्'को र "सुपः" यो सूत्रबाट 'सुप्'को अनुवृत्ति आउँछ । अतः सुबन्त सर्वनामसंज्ञक शब्दहरूको टिदेखि पूर्वतर्फ अकच्प्रत्यय होस् भन्ने अर्थ फलित भयो । टिदेखि पूर्वपट्टि अकच्प्रत्यय गर्दा युवयोः, आवयोः, युष्मासु, अस्मासु, युष्माभिः, अस्माभिः, यहाँ युवकयोः, आवकयोः, युष्मकासु, अस्मकासु, युष्मकाभिः, अस्मकाभिः यी रूप नहोलान् । युवयकोः आवयकोः युष्मासकु, अस्मासकु, युष्माभकिः, अस्माभकिः, यस्ता अनिष्ट रूप होलान् । 'सुपः'को अनुवृत्ति नगरेर प्रातिपदिकदेखि नै सर्वनामसंज्ञकशब्दको टिका पूर्वपट्टि अकच्प्रत्यय गर्ने हो भने त्वयका, मयका नभएर त्वकया, मकया रूप होलान् । त्यसकारण यो "ओकारसकारभकारादौ०" इत्यादि वार्तिकको आवश्यकता छ । यो बालमनोरमाकारको आशय हो । यहाँ सुबन्त सर्वनाम भन्नाले सर्वनामसंज्ञकशब्दका सिद्ध रूप ग्रहण हुन्छन् भन्ने कुरा पनि यही वार्तिकबाट स्पष्ट हुन आउँछ । काशिका वृत्तिमा- 'अव्ययानां सर्वनाम्नां च प्रागिवीयेष्वर्थेषु अकच् प्रत्ययो भवति, स च प्राक्टेः न परतः । प्रातिपदिकात्, सुपः इति द्वयमपीहानुवर्तते । तत्राभिधानतो व्यवस्था भवति क्वचित् प्रातिपदिकस्य प्राक्टेः, क्वचित् सुबन्तस्य । युष्मकाभिः, अस्मकाभिः, युष्मकासु, अस्मकासु, युवकयोः आवकयोः इत्यत्र प्रातिपदिकस्य, त्वयका, मयका, त्वयकि, मयकि, इत्यत्र सुबन्तस्य ।' भनेको छ । अज्ञात, कुत्सित, अनुकम्पा, अल्प, ह्रस्व, संज्ञा, अवक्षेपण, यी प्रागिवीय अर्थ हुन् ।

[१५६] ओकारसकारभकारादिसंकोचश्च युष्मदस्मन्मात्रविषयकः, तथैव भाष्ये उदाहृतत्वात् । अन्येषां त्वविशेषेण प्रातिपदिकस्यैव टेः प्रागकच् न सुबन्तस्य इति तत्त्वबोधिन्याम् ।

**१२३१. किंयत्तदोर्निधारणे द्वयोरेकस्य डतरच् ५।३।९२॥**

अनयोः कतरो वैष्णवः । यतरः । ततरः ॥

**१२३२. वा बहूनां जातिपरिप्रश्ने डतमच् ५।३।९३॥**

बहूनां मध्ये एकस्य निर्धारणे डतमज्वा स्यात् । जातिपरिप्रश्न इति प्रत्याख्यातमाकरे । कतमो भवतां कठः । यतमः । ततमः ।

---

कुत्सित अर्थमा पनि "अव्ययसर्वनाम्नां०"ले यो क प्रत्ययलाई बाधेर अव्यय, सुबन्तसर्वनाम र तिङन्तदेखि पूर्ववत् अकच् प्रत्यय नै हुन्छ र 'उच्चकैः', 'सर्वके', 'पचतकि' आदि रूप बन्दछन् ।

**किंयत्तदोरिति**– दुई मध्ये एउटाको निर्धारण (पृथक्करण) अर्थ बुझिएमा निर्धार्यमाणवाचक किम् शब्द, यद् शब्द, तद् शब्ददेखि डतरच् प्रत्यय होस् । निर्धारण भनेको अलग गर्नु हो । डतरच्प्रत्ययमा डकार र चकारको इत्संज्ञा हुन्छ ।

**कतरः**– अनयोः को वैष्णवः ? (यी दुईमध्ये कुन वैष्णव हो ?) भन्दा यहाँ इदंशब्दार्थ-यी दुई मध्ये यस वाक्यांशले किं शब्दार्थलाई निर्धारण, (पृथक्करण) गरिएको छ र निर्धार्यमाण अर्थको बोधक किम् शब्ददेखि "किंयत्तदोः"ले डतरच्प्रत्यय भयो । 'किम्+अतर' भयो, "टेः"ले किम्को टि-इम्-को लोप भयो, 'कतर' शब्द बन्यो, त्यसदेखि सु आयो, 'कतरः' सिद्ध भयो ।

यसको प्रयोग- अनयोः कतरो वैष्णवः (यी दुई मध्ये कुन वैष्णव हो ?)

**यतरः, ततरः**– यद् शब्ददेखि 'यतरः', तद्शब्ददेखि 'ततरः' यी रूप पनि डतरच्प्रत्यय भएर पूर्ववत् सिद्ध हुन्छन् । प्रयोग- अनयोर्यतरो वैष्णवः स पूज्यः (यी दुई मध्ये जुन वैष्णव छ त्यही पूज्य छ) अनयोस्ततरो वैष्णवोऽस्ति (यी दुई मध्ये त्यो वैष्णव छ)

**वा बहूनामिति**- धेरै मध्येमा एउटाको निर्धारण गर्ने अर्थ बुझिएमा निर्धार्यमण अर्थ बोधक किम्शब्द, यद् शब्द, तद् शब्दप्रकृतिक सुबन्तदेखि डतमच् प्रत्यय होस् । डतमच्को डकार र चकारको अनुबन्धलोप हुन्छ ।

**जातिपरिप्रश्न इति**- जातिपरिप्रश्ने यो पदलाई भाष्यकारले खण्डन गरेका छन् । अतः वृत्तिमा जातिप्ररिप्रश्न अर्थमा भनेर लेखिएन । सूत्रमा 'जातिपरिप्रश्ने' यो पद पढेमा जातिविषयक निर्धारणमा मात्र भन्ने यसको अर्थ हुन्छ । तर, अन्यत्र गुणविषयक, क्रियाविषयक, निर्धारणमा पनि डतमच् प्रत्यय भएको देखिन्छ । जातिनिर्धारणमा उदाहरण जस्तै-

**कतमो भवतां कठः**– (तपाइहरू मध्ये कठशाखाध्यायी को ?) यहाँ धेरै मध्ये एउटाको निर्धारण (पृथक्करण) बुझिन्छ । कठशाखाध्यायीलाई कठ भनिन्छ । 'गोत्रं च चरणैः सह' भनेर कठलाई जाति मानेको छ र यहाँ निर्धायमाण अर्थबोधक किम् शब्ददेखि उडतमच् प्रत्यय भयो, पूर्ववत् प्रक्रिया भयो, 'कतम' शब्द बन्यो, त्यसदेखि सु आयो, 'कतमः' सिद्ध भयो ।

**यतमो भवतां कठः, ततमो भवतां कठः**– (तपाइहरू मध्ये जो कठशाखाध्यायी हुनुहुन्छ) यहाँ पनि निर्धारणार्थबोधक यद्शब्ददेखि र (तपाइहरूमध्ये उहाँ कठशाखाध्यायी हुनुहुन्छ ?) भन्दा यहाँ पनि निर्धारणार्थबोधक तद् शब्ददेखि पूर्ववत् डतमच् प्रत्यय भएर 'यतमः ततमः यी दुई रूप सिद्ध भए ।

गुण र क्रियाको निर्धारणमा कतमो भवतां शूरः (तपाईंहरूमध्येमा को शूरो छ ?) कतमो भवतां पाचकः, (तपाईंहरूमध्येमा पकाउनेवाला को हो ?) इत्यादि उदाहरण पाइन्छन्, अतः 'जातिपरिप्रश्ने' यसपदको भाष्यकारबाट प्रत्याख्यान भएको हो ।

वाग्रहणमकजर्थम् । यकः । सकः ॥

**इति प्रागिवीयप्रकरणम् ॥१५॥**

## अथ स्वार्थिकाः

**१२३३. इवे प्रतिकृतौ ५।३।९६॥**

कन् स्यात् । अश्व इव प्रतिकृतिरश्वकः । **वा**.(सर्वप्रातिपदिकेभ्यः स्वार्थे कन्)। अश्वकः ॥

---

**वाग्रहणमिति**– वाग्रहण गरेको अकच् प्रत्ययको समावेशका निमित्त हो ।

**यकः, सकः**– भवतां यः कठः, भवतां स कठः यहाँ यद् शब्द र तद् शब्ददेखि टिको अगाडि अकच् प्रत्यय हुँदा 'यकद्', 'तकद्' शब्द भए, यी दुवैदेखि सु ल्याएर "त्यदादीनामः"ले अत्व पररूप गरेपछि, "तदोः स सावनन्त्ययोः"ले तद् शब्दका तकारका स्थानमा सत्व गरेपछि 'यकः', 'सकः' यी रूप सिद्ध भए । अथवा सिद्ध रूप 'यः', 'सः' यहाँ अकच् प्रत्यय गरेर 'यकः', 'सकः' यी रूप सिद्ध हुन्छन् ।

यद् शब्द र तत् शब्दको उदाहरण दिइयो, किम् शब्दको उदाहरण किन नदिएको त ? "किमःकः"ले अकच् प्रत्ययसहित किम् शब्दका स्थानमा क आदेश पहिले नै हुन्छ । अतः 'ककः' यो रूप हुँदैन । महाविभाषाको अनुवृत्ति हुनाले एकपक्षमा- को भवतां कठः । यो भवतां कठः । स भवतां कठः, यी रूप पनि हुन्छन् ।

**प्रागिवीयप्रकरण सकियो ।**

---

**अब स्वार्थिकप्रकरण आरम्भ गरिन्छ ।**

**इवे इति**– इव शब्दको अर्थमा वर्तमान अर्थात् उपमानवाचक- सुबन्त प्रातिपदिकदेखि उपमेय प्रतिकृति- मूर्ति अथवा चित्र बुझिएमा कन् प्रत्यय होस् ।

**अश्वकः**– अश्व इव प्रतिकृति (घोडा जस्तै मूर्ति) भन्दा अश्व शब्ददेखि कन् प्रत्यय भयो अश्वक सु आयो अश्वकः ।

यहाँ कन् प्रत्यय उपमानबाट हुन्छ र निष्पन्न रूपले उपमेयलाई बुझाउँछ । उपमावाचक कन् प्रत्यय हुन्छ । जस्तै -अश्वक यहाँ प्रकृति अश्व उपमान हो । किनकि अश्वकको तुलना अश्वसँग हुन्छ । अश्व शब्दबाट कन् प्रत्यय गरेर बनेको अश्वक शब्द उपमेय हो । अश्वक भनेको घोडाको मूर्ति वा चित्र हो त्यसमा अश्वको सादृश्य छ । अतः त्यो उपमेय भयो । कन् प्रत्ययले सादृश्य अर्थ बुझायो । अतः कन् प्रत्यय वाचक भयो । यसरी यहाँ उपमानोपमेय भाव प्रतीति हुन्छ ।

**सर्वप्रातिपदिकेभ्य इति**– सम्पूर्ण सुबन्त प्रातिपदिकदेखि स्वार्थमा कन् प्रत्यय होस् ।

**अश्वकः**– अश्व एव (घोडा नै) भन्दा 'अश्व+सु'देखि कन् प्रत्यय, विभक्तिलुक् भयो,

**१२३४. तत्प्रकृतवचने मयट् ५।४।२१॥**

प्राचुर्येण प्रस्तुतं प्रकृतम्, तस्य वचनं प्रतिपादनम्। भावे अधिकरणे वा ल्युट्। आद्ये प्रकृतमन्नमन्नमयम्। अपूपमयम्। द्वितीये तु अन्नमयो यज्ञः। अपूपमयं पर्व॥

**१२३५. प्रज्ञादिभ्यश्च ५।४।३८॥**

अण् स्यात्।

---

'अश्वक' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अश्वकः' सिद्ध भयो।

"इवे प्रतिकृतौ"ले गरेको कन् प्रत्ययमा उपमानोपमेयभाव छ, यसले गरेको कन् प्रत्ययमा उपमानोपमेयभाव छैन उही पदार्थलाई बुझाउँछ।

**तत्प्रकृतेति**– प्रचुर उपाधिक प्राचुर्य प्रतिपादन अर्थमा वर्तमान प्रथमान्त समर्थदेखि स्वार्थमा मयट् प्रत्यय होस्।

वृत्तिकार 'प्रकृतवचन' शब्दको अर्थ स्पष्ट गर्दछन् -

**प्राचुर्येणेति**- प्राचुर्यले प्रस्तुत गरिएको भन्दा प्रकृत भयो, त्यसको वचन भनेको प्रतिपादन हो। वचन शब्द भाव वा अधिकरणमा ल्युट् प्रत्यय गरेर बनेको हो, अतः वचन शब्दका दुई अर्थ हुन्छन्।

१. भाव अर्थमा- प्रकृतवचन शब्दको कुनै चीजको प्राचुर्य प्रतिपादन गर्नु भन्ने अर्थ हुन्छ।

२. अधिकरण अर्थमा- प्रकृतवचन शब्दको कुनै चीजको प्राचुर्य छ जहाँ, त्यसको प्रतिपादन गर्नु भन्ने अर्थ हुन्छ। यी दुवै अर्थमा मयट् प्रत्यय हुन्छ।

**आद्य इति**- पहिलो भाव अर्थमा मयट् प्रत्यय भएको पहिलो उदाहरण-

**अन्नमयम्**- प्रकृतम् (प्रचुरम्) अन्नम् (अन्नको आधिक्य) यस विग्रहमा 'अन्न+सु'देखि "तत्प्रकृतवचने मयट्"ले भाव अर्थमा मयट् प्रत्यय, विभक्तिलुक् भयो, 'अन्नमय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अन्नमयम्' सिद्ध भयो।

पहिलो भाव अर्थमा नै मयट् प्रत्यय भएको दोस्रो उदाहरण-

**अपूपमयम्**– प्रचुरा अपूपाः (मालपुवाको आधिक्य अर्थात् धेरै मालपुवा) यस विग्रहमा 'अपूप+जस्'देखि उक्त सूत्रले भाव अर्थमा मयट् प्रत्यय, विभक्तिलुक् भयो, 'अपूपमय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अपूपमयम्' सिद्ध भयो।

यी दुवै उदाहरणमा वस्तुको आधिक्य प्रतिपादन गरिएको छ। पहिलो उदाहरण 'अन्नमयम्' यहाँ अन्नको र दोस्रो उदाहरण 'अपूपमयम्' यहाँ मालपुवाको प्राचुर्य भाव व्यक्त भएको छ। यी दुवै भावार्थक उदाहरण भए।

**द्वितीयेत्विति**– दोश्रो अधिकरण अर्थमा मयट् प्रत्यय गरेमा त जस्तैः–

**अन्नमयो यज्ञः**- प्रचुरम् अन्नम् यस्मिन्यज्ञे (धेरै अन्न छ जुन यज्ञमा) यस विग्रहमा 'अन्न+सु'देखि उक्त सूत्रले अधिकरण अर्थमा मयट् प्रत्यय, विभक्तिलुक् भयो, 'अन्नमय' शब्द बन्यो, त्यसदेखि सु आयो, 'अन्नमयः' सिद्ध भयो। यज्ञको विशेषण हुनाले यहाँ अन्नमयशब्द पुंलिङ्गी भयो।

**अपूपमयं पर्व**- प्रचुरा अपूपा यस्मिन्पर्वणि (धेरै मालपुवा छन् जुन चाडमा) यस विग्रहमा "तत्प्रकृतवचने०"ले अधिकरण अर्थमा मयट् प्रत्यय, विभक्तिलुक् भयो, 'अपूपमयं' शब्द बन्यो, त्यसदेखि सु आयो, अम् भयो, 'अपूपमयम्' सिद्ध भयो। यो पर्वको विशेषण हुनाले नपुंसकलिङ्गी भयो।

**प्रज्ञादिभ्य इति**– प्रज्ञ आदि शब्ददेखि स्वार्थमा अण् प्रत्यय होस्।

---

प्रज्ञ एव प्राज्ञः । प्राज्ञी स्त्री । दैवतः । बान्धवः ॥

**१२३६. बह्वल्पार्थाच्छस्कारकादन्यतरस्याम् ५।४।४२॥**

बहूनि ददाति बहुशः । अल्पशः । **वा.**(आद्यादिभ्यस्तसेरुपसंख्यानम्) । आदौ आदितः । मध्यतः । अन्ततः । पृष्ठतः । पार्श्वतः । आकृतिगणोऽयम् । स्वरेण, स्वरतः । वर्णतः ॥

---

**प्राज्ञः**– प्रज्ञ एव (विद्वान् नैं) यस विग्रहमा प्रज्ञ शब्ददेखि अण् प्रत्यय भयो, आदिवृद्धि अकारको लोप भयो, 'प्राज्ञ' शब्द बन्यो, त्यसदेखि सु आयो, 'प्राज्ञः' सिद्ध भयो ।

**प्राज्ञी स्त्री (विदुषी स्त्री)**– स्त्रीत्व बुझिंदामा पूर्वनिष्पन्न प्राज्ञ शब्ददेखि "टिड्ढाणञ्०"ले ङीप् प्रत्यय भयो, "यस्येति च" अकारको लोप भयो, 'प्राज्ञी' शब्द बन्यो, त्यसदेखि सु आयो, 'प्राज्ञी' सिद्ध भयो ।

**दैवतः**– देवता एव (देवता नै) भन्दा देवता शब्ददेखि उक्त सूत्रले अण् प्रत्यय, आदिवृद्धि, अकारलोप भयो, 'दैवत' शब्द बन्यो, त्यसदेखि सु आयो, 'दैवतः' सिद्ध भयो ।

**बान्धवः**- बन्धुरेव (बन्धु नै) यस विग्रहमा "प्रज्ञादिभ्यश्च"ले अण् प्रत्यय, आदिवृद्धि, "ओर्गुणः"ले गुण, अव् आदेश भयो, 'बान्धव' शब्द बन्यो, त्यसदेखि सु आयो, 'बान्धवः' सिद्ध भयो ।

[१५७] **बह्वल्पार्थादिति**– बह्वर्थक र अल्पार्थक कारक शब्ददेखि विकल्पले शस् प्रत्यय होस् ।

**बहुशः**– बहूनि ददाति (धेरै दिन्छ) यहाँ दानक्रियाको कारक बह्वर्थक बहु शब्ददेखि प्रकृतसूत्रले शस् प्रत्यय भयो, 'बहुशस्' भयो, शस्प्रत्ययान्त शब्द अव्यय हुनाले सु आयो, लुक् भयो, सकारको रुत्व, विसर्ग भयो, 'बहुशः' सिद्ध भयो ।

**अल्पं ददाति-** (थोरै दिन्छ) यस विग्रहमा दानक्रियाको कारक अल्पार्थक अल्प शब्ददेखि शस् प्रत्यय भयो, 'अल्पशस्' भयो, त्यसदेखि सु आयो, लुक् भयो, सकारको रुत्व, विसर्ग भयो, 'अल्पशः' सिद्ध भयो ।

**(वा) आद्यादिभ्य इति**– आद्यादिगण पठित शब्ददेखि सबै विभक्तिका अर्थमा तसि प्रत्यय होस् भन्नू ।

**आदितः**– आदौ (पहिले) यस विग्रहमा आदि शब्ददेखि ङिको अर्थमा तसि प्रत्यय भयो, 'आदितस्' शब्द बन्यो, त्यसदेखि सु आयो, लुक् भयो, सकारको रुत्व विसर्ग भयो, 'आदितः' सिद्ध भयो ।

मध्ये (माझमा) यो विग्रहमा मध्य शब्ददेखि पूर्ववत् तसि प्रत्यय आदि प्रक्रिया भएर 'मध्यतः' यो रूप बन्दछ ।

**अन्ततः**- अन्ते (आखिरीमा) यो विग्रहमा अन्त शब्ददेखि सप्तमीको अर्थमा पूर्ववत् तसि प्रत्यय आदि प्रक्रिया भएर 'अन्ततः' सिद्ध भयो ।

यस्तै किसिमले पार्श्वे (अगलबगलबाट) यो विग्रहमा पार्श्वतः यो रूप बन्दछ ।

**आकृतिगण इति**– यो आद्यादिगण, आकृतिगण छ । आकृतिद्वारा नै यो शब्द आद्यादिगणभित्र पऱ्यो भन्ने थाहा पाइन्छ । जस्तै-

**स्वरतः, वर्णतः**– "मन्त्रो हीनः स्वरतो वर्णतो वा" यहाँ स्वरतः यो तृतीयाको अर्थमा तसिल् प्रत्यय भएर बनेको छ, वर्णतः यो पनि तृतीयाकै अर्थमा तसिल् प्रत्यय भएर बनेको छ । अतः स्वर शब्द र वर्ण शब्द, आद्यादिगणभित्र पर्दछन् । त्यस्तै अरू शब्द पनि जान्नू ।

---

[१५७] "बह्वर्थात्, अल्पार्थाच्च कारकाभिधायिनः शब्दात् शस्प्रत्ययो भवति । विशेषानभिधानाच्च सर्वं कर्मादिकारकं गृह्यते ।" इति काशिका ।

**१२३७. कृभ्वस्तियोगे संपद्यकर्तरि च्विः ५।४।५०॥**

**वा.**(अभूततद्भाव इति वक्तव्यम्) । विकारात्मतां प्राप्नुवत्यां प्रकृतौ वर्तमानाद्विकारशब्दात् स्वार्थे च्विर्वा स्यात्करोत्यादिभिर्योगे ॥

**१२३८. अस्य च्वौ ७।४।३२॥**

अवर्णस्य ईत्स्यात् च्वौ । वेर्लोपः । च्व्यन्तत्वादव्ययत्वम् । अकृष्णः कृष्णः सपद्यते तं करोति कृष्णीकरोति । ब्रह्मीभवति ।

---

**कृभ्वस्तीति**– (सम्पद्यते कर्ता संपद्यकर्ता तस्मिन सम्पद्यकर्तरि) सम् उपसर्गपूर्वमा हुने पदधातुको कर्ता अर्थमा वर्तमान भएमा । यो संपद्यकर्तरि यसको अर्थ हो । सम् उपसर्ग पूर्वमा हुने पदधातुको कर्ता अर्थमा वर्तमान प्रातिपदिकदेखि च्वि प्रत्यय होस् । कृ धातु, भू धातु र अस् धातुको योगमा ।

**(वा.) अभूत इति**– अभूततद्भाव अर्थमा च्वि प्रत्यय होस् भन्नू । अर्थात् सूत्रमा "कृभ्वस्तियोगे। अभूततद्भावे संपद्यकर्तारि च्विः" यस्तो पढ्नुपर्छ । अब सूत्रवार्तिक दुवै मिलाएर यस्तो अर्थ हुन्छ ।

**विकारात्मतामिति**– विकार हुन लागेको प्रकृतिमा वर्तमान विकारवाचक शब्ददेखि स्वार्थमा च्वि प्रत्यय होस् कृ धातु, भू धातु र अस् धातुको योगमा ।

विकारवाचक शब्द प्रकृतिमा गौण रूपले रहन्छ । अभूत तद्राव अर्थ सूचित गर्न नञ् लगाईन्छ, 'अकृष्णः' यहाँ कृष्ण शब्द गौण छ । 'कृष्णः संपद्यते' यहाँ कृष्ण शब्द मुख्य छ ।

**अस्येति**– च्वि प्रत्यय पर भएमा अवर्णका स्थानमा दीर्घ ईकार होस् । च्वि प्रत्ययमा चकार इत्संज्ञक छ, इकार उच्चारणार्थ छ, वकारको "वेरपृक्तस्य"ले लोप हुन्छ । च्वि प्रत्ययान्त हुनाले अव्ययसंज्ञक हुन्छ ।

**कृष्णीकरोति**– 'अकृष्णः कृष्णः संपद्यते, तं करोति' (कृष्ण नभएको कृष्ण बन्दछ त्यसलाई कृष्ण गराउँछ, अथवा 'अकृष्णः कृष्णो यथा संपद्यते तथा करोति' (कृष्ण हैन तर त्यसलाई कृष्ण जसरी बन्छ, त्यस्तै गराउँछ) यस्तो विग्रहमा कृष्ण शब्ददेखि अभूततद्भाव संपद्यमान कर्ताको अर्थमा कृधातु-करोति-को योगमा च्विप्रत्यय भयो, च्वि प्रत्ययको सर्वापहारि लोप भयो, "अस्य च्वौ"ले कृष्णका अकारका स्थानमा दीर्घ ईकार भयो, 'कृष्णी करोति' भयो, कृष्णीलाई "ऊर्यादिच्विडाचश्च"ले गतिसंज्ञा भयो, "कुगतिप्रादयः"ले समास भयो, 'कृष्णीकरोति' यौटै पद सिद्ध भयो । यहाँ कृष्णभिन्न नट प्रकृति हो, त्यसले कृष्णको रूप लिन्छ । अतः नट संपद्य धातुको कर्ता छ । त्यही अकृष्ण कृष्णको रूप लिने हुनाले दुवै यौटै हुन् । विकारवाचक शब्द कृष्ण छ र त्यसदेखि च्वि प्रत्यय भयो । यस्तै प्रकारले कृष्णीचकार आदि रूप पनि हुन्छन् भन्ने ऊह गर्नू । त्यस्तै भूधातुको योगमा 'कृष्णीभवति' आदि रूप पनि हुन्छन् ।

**ब्रह्मीभवति**– अब्रह्म ब्रह्म यथा संपद्यते तथा भवति (जो ब्रह्म छैन, त्यो ब्रह्म बन्दछ) यहाँ ब्रह्मन् शब्ददेखि भू धातु-भवति-को योगमा च्वि प्रत्यय भयो, त्यसको सर्वापहारि भयो, 'ब्रह्मन्+भवति' भयो, अन्तवर्तिनी विभक्तिलाई लिएर नकारको "नलोपः प्रातिपदिकान्तस्य"ले लोप भयो, 'ब्रह्म+भवति' भयो, "अस्य च्वौ"ले ईत्व भयो, 'ब्रह्मी+भवति' भयो, च्व्यन्तको पूर्ववत्, गतिसंज्ञा र समास भयो, 'ब्रह्मीभवति' सिद्ध भयो ।

यहाँ अन्तवर्तिनी विभक्ति त छैन यो शङ्का उठ्छ । त्यसमा भनिएको छ । केवल स्वार्थिक प्रत्यय मात्र प्रातिपदिकदेखि हुन्छन् । यो च्वि प्रत्यय त सुबन्तदेखि नै हुन्छ । अतः यहाँ

गङ्गीस्यात् । **वा.**(अव्ययस्य च्वावीत्वं नेति वाच्यम्) ।दोषाभूतमहः । दिवाभूतारात्रिः ॥

**१२३९. विभाषा साति कात्स्न्र्ये ५।४।५२॥**

च्विविषये सातिर्वा स्यात्साकल्ये ॥

**१२४०. सात्पदाद्योः ८।३।१११॥**

सस्य षत्वं न स्यात् । कृत्स्नं शस्त्रमग्निः संपद्यतेऽग्निसाद्भवति । दधि सिञ्चति ॥

**१२४१. च्वौ च ७।४।२६॥**

च्वौ परे पूर्वस्य दीर्घः स्यात् ।

---

'ब्रह्मन्+सु'देखि च्वि प्रत्यय हुन्छ । "सुपो धातुप्रातिपदिकयोः"ले सुप्‌को लुक् हुन्छ । यसैले यहाँ अन्तवर्तिनी विभक्ति छ भन्ने मान्नु पर्दछ । (सिद्धान्तकौमुदी बालमनोरमा )

**गङ्गीस्यात्-** अगङ्गा गङ्गा यथा संपद्यते तथा स्यात् (जो गङ्गा हैन तर गङ्गाजस्तो होला) यो अर्थमा गङ्गा शब्ददेखि स्यात् यो अस् धातुको योगमा च्वि प्रत्यय भयो, सर्वापहारिलोप भयो, "अस्य च्वौ"ले गङ्गाका आकारको ईत्व भयो, गङ्गी स्यात् भयो, गङ्गीलाई "ऊर्यादिच्वि०"ले गतिसंज्ञा र "कुगतिप्रादयः"ले समास भयो, 'गङ्गीस्यात्' सिद्ध भयो ।

(वा.) अव्ययसंज्ञक शब्दको च्वि प्रत्यय पर भएमा ईत्व नहोस् भन्नू ।

**दोषाभूतम्-** अदोषा दोषा यथा संपद्यते तथा भूतम् (जो रात छैन तर रातजस्तो भय्रो) यहाँ भूधातुको योगमा दोषा शब्ददेखि अभूततद्‌भाव अर्थमा च्वि प्रत्यय भयो, दोषाभूत भयो, यहाँ "अस्य च्वौं०" यो सूत्रले दोषाका आकारका स्थानमा इत्व पाएकोमा "अव्ययस्य च्वौ०" यो वार्तिकले ईत्व निषेध भयो, 'दोषाभूत'शब्ददेखि सु आयो, 'दोषाभूतम्' सिद्ध भयो । यो 'अहः'को विशेषण हुनाले नपुसंक भयो । यसको प्रयोग- दोषाभूतमहः (रातको रूपमा सम्पन्न भएको दिन) अँध्यारो दिन ।

**दिवाभूता-** अदिवा दिवा यथासंपद्यते तथा भूता (दिन नभए पनि दिनको रूपमा सम्पन्न भएको) यहाँ भूधातुको योगमा दिवा शब्ददेखि च्वि प्रत्यय भयो, दिवाका आकारका स्थानमा पूर्ववत् ईत्व पाएको निषेध भयो, 'दिवाभूत' भयो, यो रात्रिको विशेषण भएको हुनाले स्त्रीत्व बुझिएकोले टाप् प्रत्यय भयो, 'दिवाभूता' शब्द बन्यो, त्यसदेखि सु आयो, 'दिवाभूता' सिद्ध भयो । यसको प्रयोग- दिवाभूता रात्रिः (दिन नभए पनि दिनको रूपमा संम्पन्न रात/उज्यालो रात)

**विभाषा सातीति-**च्वि प्रत्ययको विषयमा साति प्रत्यय विकल्पले होस्,साकल्य अर्थ बुझिंदामा ।

**सात्पदाद्योरिति-** साति शब्दका दन्त्य सकारका स्थानमा र पदका आदिमा रहेका दन्त्य सकारको स्थानमा मूर्धन्य षकार नहोस् ।

**दधि सिञ्चति-** यहाँ दधिका इकार इण्‌देखि पर रहेकोले "आदेश प्रत्यययोः०"ले सिञ्चतिका षकारका स्थानमा षत्व पाएकोमा पदको आदिमा रहेको दन्त्य सकार छ र "सात्पदाद्योः"ले निषेध भयो, षत्व भएन ।

**अग्निसाद् भवति(सबै आगो हुन्छ)-** कृत्स्नं शस्त्रम् अग्निः सम्पद्यते (सबै हतियार आगो हुन्छ) यहाँ भवतिको योगमा अग्नि शब्ददेखि च्विको विषयमा "विभाषा साति कात्स्न्र्ये"ले साति प्रत्यय भयो, इकारको इत्संज्ञा लोप भयो, 'अग्निसात्' भयो, यहाँ अग्निका इकारदेखि पर रहेकोले सात्‌का सकारको "आदेशप्रत्यययोः"ले षत्व पाएको "सात्पदाद्योः"ले निषेध भयो, 'अग्निसात्' यस्तै रह्‌यो । यसको प्रयोग- कृत्स्नं शस्त्रमग्निसाद् भवति (सबै हतियार आगो हुन्छ/आगो लागेर खरानी हुन्छ)

**च्वौ चेति-** च्वि प्रत्यय पर भएमा पूर्वका अण्‌का स्थानमा दीर्घ होस् ।

---

अग्नीभवति ॥

**१२४२. अव्यक्तानुकरणाद्द्व्यजवरार्धादनितौ डाच् ५।४।५७॥**

द्व्यजेवावरं न्यूनं न तु ततो न्यूनमनेकाजिति यावत् । तादृशमर्ध यस्य तस्माड्डाच् स्यात् कृभ्वस्तिभिर्योगे । **वा.**(डाचि विवक्षिते द्वे बहुलम्) । इति डाचि विवक्षिते द्वित्वम् । **वा.** (नित्यमाम्रेडिते डाचीति वक्तव्यम्) । डाच्परं यदाम्रडितं तस्मिन्परे पूर्वपरयोर्वर्णयोः पररूपं स्यात् इत्यर्थः । इति तकारपकारयोः पकारः । पटपटाकरोति । अव्यक्तानुकरणात्किम् ? ईषत्करोति । द्व्यजवरार्धात्किम् ? श्रत्करोति । अवरेति किम् ? खरटखरटाकरोति ।

---

**अग्नीभवति-** कृत्स्नमग्निः संपद्यते (सबै आगो बन्दछ) यस विग्रहमा पूर्वसूत्रले सातिप्रत्यय नभएको पक्षमा च्वि प्रत्यय भयो, सर्वापहारी लोप भयो, "च्वौ च"ले पूर्वका अण्, अग्निका इकारका स्थानमा दीर्घ हुँदा आन्तरतम्यात् दीर्घ ईकार भयो, गतिसंज्ञा, समास भयो, 'अग्नीभवति' सिद्ध भयो ।

**अव्यक्तेति (द्व्यजेवेति)-** 'कम्तीमा दुई अच् हुने अर्थात् दुई अच्भन्दा कम नहुने आधा छ जसको अर्थात् अनेकाच् आधा हुने',यो 'द्व्यजवरार्धात्'को अर्थ हो ।

अतः सूत्रको अर्थ भयो- अनेकाच् आधाभागमा हुने ध्वनिको अनुकरणवाचक शब्ददेखि डाच् प्रत्यय होस्, कृ धातु, भू धातु र अस् धातुको योगमा, इति शब्दको प्रयोग नभएमा ।

**(वा) डाचि चेति-** डाच् प्रत्ययको विवक्षामा बहुलप्रकारले द्वित्व होस् ।

**(वा) नित्यमाम्रेडिते इति-** डाच् प्रत्यय पर भएको जो आम्रेडित छ त्यो पर भएमा पूर्व र परका वर्णको पररूप होस् । यो वार्तिकले तकार र पकारका स्थानमा पररूप हुन्छ ।

**पटपटाकरोति-** पटत् करोति (पडचाक्क गर्छ) यहाँ डाच् प्रत्ययको विवक्षामा "डाचि विवक्षिते"ले पटत् शब्दको द्वित्व भयो, पटत् पटत् करोति भयो, यहाँ आधा भाग अनेकाच् भएका अनुकरणवाचक, पटत् पटत् शब्ददेखि "अव्यक्तानुकरणात्"ले डाच् प्रत्यय भयो, 'पटत्+पटत्+आ+करोति' भयो, टिलोप भयो, 'पटत्+पटा+करोति' भयो, "नित्यमाम्रेडिते०"ले तकार र पकारको पररूप भयो, 'पटपटा+करोति' भयो, पटपटालाई "ऊर्यादिच्विडाचश्च"ले गतिसंज्ञा भयो, "कुगतिप्रादयः"ले समास भयो, 'पटपटाकरोति' सिद्ध भयो ।

**अव्यक्तानुकरणात्किमिति-** डाच् प्रत्यय गर्ने सूत्रमा 'अव्यक्तानुकरणात्' किन भन्नू ? नभन्ने हो भने ईषत् करोति यहाँ पनि डाच् होला । सो नहोस् भनेर 'अव्यक्तानुकारणात्' भनेको हो, ईषत् यो अव्यक्त अनुकरण छैन र डाच् प्रत्यय भएन ।

**द्व्यजवरार्धात् किमिति-** डाच् प्रत्यय गर्ने सूत्रमा 'द्व्यजवरार्धात्' अनेकाच् आधा भागमा हुने किन भन्नू ? नभन्ने हो भने 'श्रत्करोति' यहाँ श्रत् शब्ददेखि डाच् प्रत्यय होला । यो श्रत्शब्द अनेकाच् छैन र डाच्प्रत्यय भएन । अनेकाच् नभन्ने हो भने डाच्को विवक्षामा द्वित्व हुन्थ्यो र श्रत् श्रत् हुन्थ्यो तब आधा भाग श्रत् यो अनेकाच् नभए पनि डाच् हुन्थ्यो । सो नहोस भनेर आधा भाग अनेकाच् हुने भनिएको हो सो भने पछि यहाँ आधा भागमा अनेकाच् छैन र डाच् प्रत्यय पाएन, डाच्को विवक्षा नहुनाले द्वित्व पनि भएन, 'श्रत्करोति' यस्तै रह्यो ।

**अवरेति किम्-** डाच्गर्ने सूत्रमा अवरशब्द किन पढ्नु, अवरशब्द नपढ्ने हो भने आधा भागमा दुईअच् हुने भन्ने अर्थ होला र 'खरटत् करोति' यहाँ आधा भागमा तीन अच् भएकोले डाच् प्रत्यय नहोला । अतः अवर शब्द पढियो, अवर शब्द पढेपछि कंतीमा दूईअच् हुने अर्थात् अनेकाच्

---

अनितौ किम् ? पटिति करोति ॥

इति स्वार्थिकप्रकरणम् ॥१६॥ ॥

तद्धितप्रकरणं समाप्तम् ॥

## अथ स्त्रीप्रत्ययाः

**१२४३. स्त्रियाम् ४।१।३॥**
अधिकारोऽयम् । समर्थानामिति यावत् ॥
**१२४४. अजाद्यतष्टाप् ४।१।४॥**
अजादीनामकारान्तस्य च वाच्यं यत् स्त्रीत्वं तत्र द्योत्ये टाप् स्यात् । अजा ।

---

हुने भन्ने अर्थ बुझियो र यहाँ डाच् भयो, पूर्ववत् प्रक्रिया भएर 'खरटखरटाकरोति' सिद्ध भयो ।

**अनितौ किमिति**– डाच् गर्ने सूत्रमा इतिशब्दको प्रयोग नभएमा किन भन्नु ? नभन्ने हो भने ? 'पटत् इति करोति' यहाँ इति शब्दको प्रयोग भएको ठाउँमा पनि डाच् प्रत्यय होला । सो नहोस् भनेर (अनितौ) इति शब्द प्रयोग नभएमा भनियो, यहाँ इति शब्दको प्रयोग भएको छ र डाच् प्रत्यय भएन 'पटिति करोति' यस्तै रह्यो ।

**स्वार्थिक प्रकरण सकियो ।**
**तद्धितप्रकरण साङ्गोपाङ्ग समाप्त भयो ।**

---

**अव स्त्रीप्रत्ययप्रकरण आरम्भ गरिन्छ ।**

**स्त्रियामिति**– यो अधिकार सूत्र हो । "समर्थानां प्रथमाद्वा" यो सूत्रदेखि पूर्वसम्म स्त्रियाम् यो अधिकार गरिन्छ ।

**अजाद्यत इति**– अज आदि गणपठित अकारान्त प्रातिपदिकदेखि टापप्रत्यय होस् ।

टाप्को आ बाँकी रहन्छ, टकार र पकारको इत्संज्ञा र लोप हुन्छ ।

**अजा(बाख्री)**– अजा शब्ददेखि स्त्रीत्व बुझिंदामा "अजाद्यतष्टाप्"ले अज यो अजादि गण पठित शब्द हुनाले टाप् प्रत्यय भयो, 'अज+आ'भयो, "अकः सवर्णे०"ले दीर्घ भयो, अजाशब्द बन्यो, अजा शब्ददेखि सु आयो, "हल्ङ्याब्भ्यो०"ले लोप भयो, 'अजा' सिद्ध भयो ।

आबन्त शब्द र ङ्यन्त शब्ददेखि पनि 'प्रातिपदिकग्रहणे लिङ्गविशिष्टस्यापि ग्रहणम्' यो परिभाषा लगाएर प्रातिपदिकत्वात् स्वादि आउँछन्, अथवा "ङ्याप्प्रातिपदिकात्"यो सूत्रमा ङ्यन्त आबन्त पढिएकोले नै स्वादि आउँछन् । तर ङी र आप्को ग्रहण गर्नाको फल अर्कै छ, यहाँ

एडका । अश्वा । चटका । मूषिका । बाला । वत्सा । होडा । मन्दा । विलाता । इत्यादि ॥ मेधा । गङ्गा । सर्वा ।

**१२४५. उगितश्च ४।१।६॥**

उगिदन्तात्प्रातिपदिकात्स्त्रियां ङीप्स्यात् । भवती । भवन्ती । पचन्ती । दीव्यन्ती ॥

---

'प्रातिपदिकग्रहणे' यही परिभाषाको बलले स्वादि प्रत्यय हुन्छन् भन्ने तत्त्वबोधिनीकारको भनाइ छ ।

**एडका(भेडी)**– एडक शब्ददेखि स्त्रीत्व बुझिंदामा उक्त सूत्रले टाप्प्रत्यय भयो, दीर्घ भयो, 'एडका' शब्द बन्यो, त्यसदेखि सु आयो, 'एडका' सिद्ध भयो ।

यस्तै प्रकारले अश्व शब्दबाट टाप् प्रत्यय भयो, पूर्ववत् 'अश्वा' (घोडी) सिद्ध भयो ।

**चटका इत्यादि**– चटक शब्दबाट टाप् प्रत्यय भयो, पूर्ववत् 'चटका' (भँगेरी) सिद्ध भयो । मूषक शब्दबाट टाप् प्रत्यय भयो, पूर्ववत् 'मूषिका' (मुसी) सिद्ध भयो । बाल शब्दबाट टाप् प्रत्यय भयो, 'बाला' सिद्ध भयो । वत्स शब्दबाट टाप् प्रत्यय भयो, 'वत्सा' सिद्ध भयो । होड शब्दबाट टाप् प्रत्यय भयो, पूर्ववत् 'होडा' सिद्ध भयो । विलात शब्दबाट टाप् प्रत्यय भयो, पूर्ववत् 'विलाता' सिद्ध भयो । बाला, वत्सा, होडा र विलाता यी चार शब्द कुमारीवाचक छन् ।"वयसि चरमे"ले पाएको ङीप् प्रत्ययलाई बाध्न यी शब्दहरू अजादिगणमा पढिएको हो । मूलमा दिइएका यी शब्दहरू र अरू पनि अजादिगण पठित शब्द हुन् । अज शब्द अकारान्त छ । अकारान्त भएर नै टाप् प्रत्यय हुन्थ्यो, छुट्टै पढेको जातिलक्षण ङीष्लाई बाध्नका निमित्त हो, बाल, वत्स यी दुई शब्द वयोवाचक ङीष्लाई बाध्न अजादि गणमा पढिएको हो । यस्तै अरू शब्दमा पनि विशेष कारण छन् ।

**मेधा, गङ्गा**– मेध, गङ्ग, यी अकारान्त शब्ददेखि बुद्धि र नदीलाई कहँदा स्त्रीत्व बुझिएकोले टाप् प्रत्यय भयो दीर्घ भयो । पूर्ववत् मेधा, गङ्गा सिद्ध भयो ।

**सर्वा**– सर्वशब्ददेखि स्त्रीत्व बुझिंदामा "अजाद्यतष्टाप्"ले यो अकारान्त प्रातिपदिक छ र टाप् प्रत्यय भयो, दीर्घ भयो, 'सर्वा' भयो, सु आयो, लोप भयो, 'सर्वा' सिद्ध भयो ।

**उगितश्चेति**– उक्को इत्संज्ञा हुने प्रत्यय अन्तमा हुने प्रातिपदिकदेखि स्त्रीत्व बुझिंदामा ङीप् प्रत्यय होस् ।

भू धातुदेखि शतृ प्रत्यय भएर बनेको भवत् शब्द छ, यहाँ शतृ प्रत्ययमा ऋकारको इत्संज्ञा भएकोले उगित् भयो, तदन्तप्रातिपदिक भवत् शब्द भयो, त्यस्तै ईयसुन् प्रत्ययान्त शब्दपनि इयमा सुको उकारको इत्संज्ञा हुने हुनाले उगिदन्त हुन्छ । यस्तै क्वसु प्रत्ययान्त विद्वस् आदि शब्द पनि उगिदन्त भए, यस्तै अरू शब्दहरू पनि सम्झनू ।

**भवन्ती**– भवति (हुन्छ) यस विग्रहमा भू धातुदेखि शतृ प्रत्यय भएर भवत् शब्द बन्यो, स्त्रीत्व बुझिएकोले भवत् शब्ददेखि "उगितश्च"ले ङीप् प्रत्यय भयो, ङीप् यो नित्यस्त्रीलिङ्गमा वर्तमान शब्द हुनाले नदीसंज्ञा भयो, "शप्श्यनोर्नित्यम्"ले नदीसंज्ञक शब्द पर छ र 'नुम्' भयो, 'भवन्ती'शब्द बन्यो, त्यसदेखि सु आयो, "हल्ङ्याब्भ्यो०"ले लोप भयो, 'भवन्ती' सिद्ध भयो ।

"भातेर्डवतुः"ले डवतु प्रत्यय भएर बनेको भवत् शब्ददेखि पनि उगिदतन्त्वात् ङीप् हुन्छ, तर नुम् हुन्न 'भवती' यस्तो रूप हुन्छ ।

**पचन्ती**– पचति (पकाउँछे) यो विग्रहमा पच् धातुदेखि शतृ प्रत्यय भएर 'पचत्' शब्द भयो । स्त्रीत्व बुझिएकोले पचत् शब्ददेखि "उगितश्च"ले ङीप्प्रत्यय, "शप्श्यनोः०ले नुम् भयो, 'पचन्ती' शब्द बन्यो, त्यसदेखि सु आयो, 'पचन्ती' सिद्ध भयो ।

**दीव्यन्ती**– दीव्यति (खेल्छे) यस विग्रहमा शतृप्रत्ययान्त दीव्यत् शब्ददेखि स्त्रीत्व बुझिएकोले

**१२४६. टिड्ढाणञ्द्वयसज्दघ्नञ्मात्रच्तयप्ठक्ठञ्कञ्क्वरपः ४।१।१५।।**

अनुपसर्जनं यट्टिदादि तदन्तं यददन्तं प्रातिपदिकं ततः स्त्रियां ङीप्स्यात् । कुरुचरी । नदट् नदी । देवट् देवी । सौपर्णेयी । ऐन्द्री ।

---

उक्त सूत्रले ङीप्, श्यन् प्रत्ययदेखि पर रहेको शतृ प्रत्ययको अवयव हुनाले उक्त सूत्रले नुम् भयो, 'दीव्यन्ती' शब्द बन्यो, त्यसदेखि सु आयो, 'दीव्यन्ती' सिद्ध भयो । ईयसुन् प्रत्ययान्त उदाहरण मूलमा छैनन् ।

लघीयसी, श्रेयसी, प्रेयसी, यी शब्दहरू ईयसुन् प्रत्ययान्त लघीयस्, श्रेयस्, प्रेयस् शब्ददेखि ङीप् प्रत्यय भएर बनेका हुन् ।

**टिड्ढेति**– टित् (टकारको इत्संज्ञा हुने) प्रत्यय, ढ प्रत्यय, अण् प्रत्यय, अञ् प्रत्यय द्वयसच् प्रत्यय, दघ्नच् प्रत्यय, मात्रच् प्रत्यय, तयप् प्रत्यय, ठक् प्रत्यय, ठञ् प्रत्यय कञ् प्रत्यय, क्वरप् प्रत्यय अन्तमा हुने जो ह्रस्व अकारान्त, [१५८]उपसर्जन नभएको प्रातिपदिक छ त्यसदेखि स्त्रीत्व बुझिंदामा ङीप् प्रत्यय होस् ।

**कुरुचरी**– कुरुषु चरति (कुरु देशमा हिड्छे) यहाँ "चरेष्टः"ले टप्रत्यय भएर बनेको कुरुचरशब्द टिदन्त, अकारान्त, अनुपर्सजन प्रातिपदिक भएकोले स्त्रीत्व बुझिंदा टाप्लाई बाधेर प्रकृत सूत्र "टिड्ढाणञ्०"ले ङीप्प्रत्यय भयो, "यस्येति च"ले अकारको लोप भयो, 'कुरुचरी' शब्द बन्यो, त्यसदखि सु आयो, 'कुरुचरी' सिद्ध भयो ।

अष्टाध्यायी सूत्रपाठमा ४।१।७६ सूत्रदेखि तद्धितप्रत्यय शुरू हुन्छन्, ङीप्प्रत्यय तद्धित हैन, "यस्येति च"ले अकारको लोप तद्धित प्रत्यय पर मानेर भएको हैन, दीर्घ ईकार पर मानेर भएको हो । ङीप्लाई पर राखेर 'कुरुचर' यसलाई भसंज्ञा हुन्छ ।

**नदी**– नदट् शब्द पचादिगणभित्र छ । टकारको इत्संज्ञा लोप भएर नदशब्द बन्यो, स्त्रीत्व बुझिदामा नद शब्ददेखि उक्त सूत्रले टित्त्वात् ङीप् प्रत्यय भयो, अकारलोप भयो, 'नदी' शब्द बन्यो, त्यसदेखि सु आयो, 'नदी' सिद्ध भयो ।

**देवी**– देवट् शब्द पनि पचादिगणभित्र छ । टकारको इत्संज्ञा भएपछि, 'देव'शब्ददेखि स्त्रीत्व बुझिंदामा उक्त सूत्रले ङीप् भयो, 'देवी' शब्द बन्यो, त्यसदेखि सु आयो, 'देवी' सिद्ध भयो ।

**सौपर्णेयी**– सुपर्णायाः अपत्यं स्त्री (सुपर्णाकी छोरी) यस अर्थमा "स्त्रीभ्यो ढक्"ले ढक् प्रत्यय भएर 'सौपर्णेय' शब्द बन्यो, त्यसको स्त्रीत्व बुझिंदामा उक्त सूत्रले ङीप् प्रत्यय भयो, अकारको लोप भयो, 'सौपर्णेयी' शब्द बन्यो, त्यसदेखि सु आयो, 'सौपर्णेयी' सिद्ध भयो ।

अथवा सुपर्ण्या अपत्यम् यस अर्थमा सुपर्णी शब्ददेखि ढक् प्रत्यय भएर पनि 'सौपर्णेय' बन्छ । अनि त्यसदेखि ङीप् गर्दा 'सौपर्णेयी' हुन्छ ।

**ऐन्द्री**– इन्द्रो देवता अस्य (इन्द्र छन् देवता यसका) यस अर्थमा "सास्य देवता"ले अण् प्रत्यय भएर 'ऐन्द्र' शब्द बन्यो, यो ऋक्को विशेषण हुँदा स्त्रीत्व बुझियो र "टिड्ढाणञ्०"ले ङीप् प्रत्यय भयो, 'ऐन्द्री' शब्द बन्यो, त्यसदेखि सु आयो, 'ऐन्द्री' सिद्ध भयो ।

**यसको प्रयोग**- ऐन्द्री ऋक (इन्द्र संबन्धी ऋचा) दिक्को विशेषण भएमा- ऐन्द्री दिक् ( पूर्वदिशा) इत्यादि ।

---

१५८ "इतरविशेषणतया स्वार्थोपस्थापकत्वमुपसर्जनत्वम्" यो परिभाषा अनुसार भनिएको उपसर्जनत्व यहाँ लिइन्छ ।

औत्सी । ऊरुद्वयसी । ऊरुदघ्नी । ऊरुमात्री । पञ्चतयी । आक्षिकी । लावणिकी । यादृशी । इत्वरी । **वा.** (नञ्स्नञीकक्ख्युंस्तरुणतलुनानामुपसङ्ख्यानम्) ।

---

**औत्सी**– उत्से जाता (खोल्सामा जन्मेकी) यस विग्रहमा 'जातः' अर्थमा "उत्सादिभ्योऽञ्"ले अञ्प्रत्यय भएर 'औत्स' भयो, स्त्रीत्व बुझिएकोले "टिड्ढाणञ्०"ले ङीप् भयो, 'औत्सी' शब्द बन्यो, त्यसदेखि सु आयो, 'औत्सी' सिद्ध भयो ।

**उरुद्वयसी**– ऊरू प्रमाणमस्याः (तिघ्रासम्म प्रमाण भएकी) यस विग्रहमा "प्रमाणे द्वयसज्दघ्नञ्मात्रचः"ले द्वयसच्प्रत्यय भएर 'उरुद्वयस' शब्द बन्यो, यो द्वयसच्प्रत्ययान्त शब्द हुनाले "टिड्ढाणञ्०"ले स्त्रीत्व बुझिदामा ङीप् प्रत्यय भयो, पूर्ववत् 'उरुद्वयसी' सिद्ध भयो । **प्रयोग** उरुद्वयसी नदी (तिघ्रा सम्म जल भएकी नदी) । यस्तै प्रकारले नितम्बद्वयसी, जानुद्वयसी, जानुदघ्नी, गुल्फदघ्नी आदि शब्द पनि सिद्ध हुन्छन् ।

**पञ्चतयी**– पञ्च अवयवा यस्याः (पाँच ओटा छन् अवयव जसका) यो विग्रहमा पञ्चन् शब्ददेखि "सङ्ख्याया अवयवे०"ले तयप्त्यय भएर 'पञ्चतय'शब्द बन्यो, यहाँ स्त्रीत्व बुझिएकोले "प्रकृत" सूत्रले ङीप् प्रत्यय भयो, सु आयो, 'पञ्चतयी' सिद्ध भयो ।

**यसको प्रयोग**– पञ्चतयी वृत्तिः (पाँच अवयव भएको वृत्ति) कृत्, तद्धित, समास, एकशेष, सनाधन्तधातु यी पाँच वृत्ति छन् ।

यस्तै प्रकारले- चतुष्टयी शब्दानां प्रवृत्तिः (शब्दहरूको प्रवृत्ति चार प्रकारको छ) यहाँ पनि "टिड्ढाणञ्०"ले चतुष्टय शब्ददेखि ङीप् प्रत्यय भएर 'चतुष्टयी' शब्द बनेको हो ।

**आक्षिकी**– अक्षैर्दीव्यति या (जो जूवा खेल्छे) यस अर्थमा "तेन दीव्यति०"ले ठक् प्रत्यय भएर 'आक्षिक' यो प्रातिपदिक बन्यो, यहाँ स्त्रीत्व बुझिएकोले ठक् प्रत्ययान्त आक्षिक शब्ददेखि उक्त सूत्रले ङीप् प्रत्यय भयो, 'आक्षिकी' शब्द बन्यो, सु आयो, 'आक्षिकी' सिद्ध भयो ।

**प्रास्थिकी**– प्रस्थेन क्रीता (पाथीले किनिएकी) यस अर्थमा "तेन क्रीतम्"ले ठञ् प्रत्यय गरेर प्रास्थिक यो प्रातिपदिक बन्यो, स्त्रीत्व बुझिंदामा त्यसदेखि "टिड्ढाणञ्०"ले यो ठञ् प्रत्ययान्त हुनाले ङीप् प्रत्यय भयो, सु आयो, 'प्रास्थिकी' सिद्ध भयो ।

**लावणिकी**– लवणः पण्यमस्याः (नून छ बिक्री गर्ने चीज यसको) यस विग्रहमा "तदस्य पण्यम्"ले ठञ् प्रत्यय भएर 'लावणिक' यो प्रादिपदिक बन्यो, यो ठञ् प्रत्ययान्त प्रातिपदिक हुनाले उक्त सूत्रले ङीप् प्रत्यय भयो, पूर्ववत् 'लावणिकी' सिद्ध भयो ।

**यादृशी (जस्ती)**– यहाँ यद् शब्द पूर्वमा हुने दृश् धातुदेखि "त्यदादिषु दृशोऽनालोचने०"ले कञ् प्रत्यय भयो, "आ सर्वनाम्नः"ले दकारका स्थानमा आकार, दीर्घ भएर 'यादृश' शब्द बन्यो, यो शब्द कञ् प्रत्ययान्त छ, यहाँ स्त्रीत्व बुझिएकोले प्रस्तुत सूत्रले ङीप् प्रत्यय भएर पूर्ववत् 'यादृशी' सिद्ध भयो ।

**इत्वरी**– एतुं शीलमस्याः (हिंड्ने शील छ यसको) यस विग्रहमा "इण्नशिजिसर्तिभ्यः०"ले ताच्छील्य अर्थमा क्वरप् प्रत्यय "ह्रस्वस्य पिति कृति०"ले तुक् आगम भएर इत्वर यो प्रातिपदिक बन्यो, क्वरप् प्रत्ययान्त हुनाले स्त्रीत्व बुझिदामा प्रकृत सूत्रले ङीप् प्रत्यय भयो, पूर्ववत् 'इत्वरी' सिद्ध भयो ।

**(वा) नञ्स्नञीकगिति**– नञ् प्रत्यय, स्नञ् प्रत्यय, ईकक् प्रत्यय, ख्युन् प्रत्यय, अन्तमा हुने शब्द र तरुण शब्द, तलुन शब्द, यी शब्ददेखि स्त्रीत्व बुझिँदामा ङीप् प्रत्यय होस् भन्नू ।

---

स्त्रैणी । पौंस्नी । शाक्तीकी । याष्टीकी । आढचङ्करणी । तरुणी । तलुनी ॥

**१२४७. यञश्च ४।१।१६॥**

यञन्तात् स्त्रियां ङीप्स्यात् । अकारलोपे कृते–

**१२४८. हलस्तद्धितस्य ६।४।१५०॥**

हलः परस्य तद्धितयकारस्योपधाभूतस्य लोप ईति परे । गार्गी ॥

---

**स्त्रैणी**– स्त्रिया इयम् (स्त्रीकी यो) यो विग्रहमा "स्त्रीपुंसाभ्या नञ्स्नञौ भवनात्" यो सूत्रले "तस्येदम्"को अर्थमा नञ् प्रत्यय भयो, 'स्त्रैण'शब्द बन्यो, यहाँ स्त्रीत्व बुझिएकोले "नञ् स्नञीकक्०"यो वार्तिकले ङीप् प्रत्यय, अकारलोप भयो, 'स्त्रैणी'शब्द बन्यो, सु आयो, 'स्त्रैणी' सिद्ध भयो । स्त्रैण शब्दको सिद्धिप्रक्रिया तद्धितमा बताइएको छ ।

**पौंस्नी**– पुंस इयम (पुरुषकी यो) यस विग्रहमा पुंस् शब्द देखि "स्त्रीपुंसाभ्यां०"ले स्नञ्प्रत्यय भयो, 'पौंस्न' भयो, स्त्रीत्व बुझिएकोले उक्त वार्तिकले ङीप् प्रत्यय भयो, 'पौंस्नी'शब्द बन्यो सु आयो, 'पौंस्नी' सिद्ध भयो । पौंस्न शब्दको सिद्धि प्रक्रिया पनि तद्धितमा छँदैछ उहीँ हेर्नू ।

**शाक्तीकी**– शक्तिः प्रहरणमस्याः (शक्तिनामक हतियार, प्रहार गर्ने साधन छ, जुन स्त्रीको) यस विग्रहमा "शक्तियष्टचोरीकक्" यो सूत्रले "तदस्य प्रहरणम्"को अर्थमा ईकक् प्रत्यय, आदिवृद्धि, इकारलोप भएर 'शाक्तीक' शब्द बन्यो, स्त्रीत्व बुझिएकोले "नञ्स्नञीकक्०"ले ङीप् प्रत्यय अकारलोप भयो, सु आयो, 'शाक्तीकी' सिद्ध भयो ।

**आढचङ्करणी**– अनाढचः, आढचः क्रियतेऽनया (निर्धन व्यक्तिलाई धनी गराउँछ यसले) यो विग्रहमा "आढचसुभगस्थूलपलित०" यो सूत्रले ख्युन् प्रत्यय भयो, "अरुर्द्विषदजन्तस्य०"ले मुम् आगम भएर 'आढचङ्करण' शब्द बन्यो, स्त्रीत्व बुझिंदामा "नञ्स्नञीकक्०" यो वार्तिकले ङीप् प्रत्यय भयो, अकारलोप भयो, सु आयो, 'आढचङ्करणी' सिद्ध भयो ।

**यसको प्रयोग**– आढचङ्करणी विद्या (निर्धनलाई धनी बनाउने साधन विद्या हो ।)

**तरुणी**– तरुणवयोविशिष्टा स्त्री (तरुण उमेरले विशिष्ट स्त्री) यो अर्थमा स्त्रीत्व बुझिंदामा "नञ्स्नञीकक्०" यो वार्तिकले तरुण शब्ददेखि ङीप् प्रत्यय भयो, अकारलोप भयो, सु आयो, 'तरुणी' सिद्ध भयो ।तलुन, तरुण यी दुवै शब्द पयार्यवाची हुन् ।

**तलुनी**– तलुनवयो विशिष्टा स्त्री (तरुनी भएकी स्त्री) यस अर्थमा पूर्ववत् उक्त वार्तिकले ङीप् प्रत्यय भएर 'तलुनी' शब्द बन्यो, सु आयो, तलुनी सिद्ध भयो ।

**यञश्चेति**– यञ्प्रत्ययान्त प्रातिपदिकदेखि स्त्रीत्व बुझिंदामा ङीप् प्रत्यय होस् । यञन्तदेखि ङीप् प्रत्यय भएर अकार लोप गरे पछि ।

**हलस्तद्धितस्येति**– हल्देखि पररहेका तद्धितसंज्ञक प्रत्ययको अवयव उपधाभूत यकारको लोप होस्, दीर्घ ईकार पर भएमा ।

**गार्गी**– गर्गस्य गोत्रापत्यम् स्त्री (गर्गको गोत्रापत्य स्त्री) यस विग्रहमा गर्ग शब्ददेखि "गर्गादिभ्यो यञ्"ले यञ् प्रत्यय भयो, आदिवृद्धि, अकारलोप भएर 'गार्ग्य' शब्द बन्यो, स्त्रीत्व बुझिएकोले गार्ग्य शब्ददेखि "यञश्च"ले ङीप् प्रत्यय भयो, अकारलोप भयो, 'गार्ग्य्+ई' भयो, यहाँ यलाई उपधासंज्ञा भयो, "हलस्तद्धितस्य"ले यकारको लोप भयो, 'गार्गी' भयो, सु आयो, 'गार्गी' सिद्ध भयो । यहाँ "यस्येति च"ले गरेको अकारको लोप आभीयत्वात् असिद्ध हुन्छ र य उपधामा नै भएको मानिन्छ ।

एकपक्षमा आगामी सूत्रले गार्ग्य शब्ददेखि ष्फ प्रत्यय हुन्छ ।

---

**१२४९. प्राचां ष्फ तद्धितः ४।१।१७।।**

यञन्तात् ष्फो वा स्यात् स च तद्धितः ॥

**१२५०. षिद्गौरादिभ्यश्च ४ । १ । ४१ ।।**

षिद्भ्यो गौरादिभ्यश्च स्त्रियां ङीष् स्यात् । गार्ग्यायणी । नर्तकी । गौरी । **(वा)** आमनुडुहः स्त्रियां वा । अनडुही । अनड्वाही । आकृतिगणोऽयम् ।

**१२५१. वयसि प्रथमे ४।१।२०।।**

प्रथमवयोवाचिनोऽदन्तात् स्त्रियां ङीप्स्यात् ।

---

**प्राचामिति**– यञ्प्रत्ययान्तदेखि स्त्रीत्व बुझिंदामा ष्फ प्रत्यय होस् र त्यो तद्धितसंज्ञक पनि होस् प्राचीन मतमा । षकारको इत्संज्ञा, लोप हुन्छ । फकारका स्थानमा "आयनेयी०"ले आयन् आदेश हुन्छ । तद्धितसंज्ञा गर्नको फल प्रातिपदिकसंज्ञा हो । किनकि प्रातिपदिकसंज्ञा नभै ङीष् प्रत्यय हुँदैन । ङीष् प्रत्यय गर्नको लागि षित् प्रत्यय विधान गरेको हो ।

**षिद्गौरादीति**- षित् प्रत्ययान्त प्रातिपदिक र गौरादिगणपठित प्रातिपदिकदेखि स्त्रीत्व बुझिंदामा ङीष् प्रत्यय होस् ।

**गार्ग्यायणी**– (गर्गस्य गोत्रापत्यं स्त्री) यस विग्रहमा "गर्गादिभ्यो"ले यञ् प्रत्यय गार्ग्य शब्द बनेपछि प्राचीनको मतमा "यञश्च"लाई बाधेर "प्राचा ष्फः०"ले ष्फ प्रत्यय भयो, षकारको इत्संज्ञा लोप भयो, फकारका स्थानमा आयन् आदेश भयो, णत्व भयो, 'गार्ग्यायण' शब्द बन्यो, ष्फलाई तद्धितसंज्ञा भएकोले तद्धितान्तत्वात् 'गार्ग्यायणलाई प्रातिपदिकसंज्ञा भयो, र षिदन्त प्रातिपदिक हुनाले स्त्रीत्व बुझिंदामा "षिद्गौरादिभ्यश्च"ले ङीष्प्रत्यय, अकार लोप भयो, 'गार्ग्यायणी' भयो, सु आयो, 'गार्ग्यायणी' सिद्ध भयो । यो सूत्रले ष्फ नभएको पक्षमा "यञश्च"ले ङीप् प्रत्यय भएर बनेको 'गार्गी' यो रूप पहिले नै देखाइयो ।

**नर्तकी**- नृत्यति क्रियाकुशला (नाच्ने क्रियामा कुशल स्त्री) यो अर्थमा "शिल्पिनि ष्वुन्"ले ष्वुन्प्रत्यय भएर 'नतर्क'शब्द बन्यो, स्त्रीत्व बुझिएकोले "षिद्गौरादिभ्यश्च"ले षित्प्रत्ययान्त नर्तक शब्ददेखि ङीष् प्रत्यय भयो, 'नर्तकी' भयो, सु आयो, 'नर्तकी' सिद्ध भयो ।

**गौरी**- गौरवर्णविशिष्टा स्त्री (गोरी स्त्री) यस अर्थमा स्त्रीत्व बुझिंदामा गौर शब्ददेखि "षिद्गौरादिभ्यश्च"ले ङीष् प्रत्यय भयो, 'गौरी' भयो सु आयो, 'गौरी' सिद्ध भयो ।

ङीप्, ङीष् आदि अच् आदिमा हुने प्रत्यय पर भएमा "यचि भम्"ले प्रकृतिलाई भसंज्ञा हुन्छ र प्रातिपदिकान्त अकार, इकारको "यस्येति च"ले लोप हुन्छ । साथै ङ्यन्त, आबन्त शब्ददेखि स्वादि विभक्ति आउँछन् भन्ने कुरा पनि स्मरण गर्नू । यहाँ प्रायः प्रथमाको एकवचन सु ल्याएर नै रूप देखाइएको छ ।

**(वा.) आमिति**- स्त्रीत्व बुझिंदामा अनडुह् शब्दको आम् आगम विकलपले होस् । यो वार्तिक गौरादि गणपाठ अन्तर्गत छ ।

**अनड्वाही/अनडुही**- (गाई) अनडुह् शब्ददेखि स्त्रीत्व बुझिंदामा "षिद्गौरादिभ्यश्च"ले ङीष् प्रत्यय भयो, "आमनडुहः" यो वार्तिकले वैकल्पिक आम् आगम भयो, 'अनड्वाही' भयो, आम् नभएमा 'अनडुही' भयो । दुवैशब्ददेखि सु आयो, 'अनड्वाही'/'अनडुही' दुवै रूप सिद्ध भए ।

यो गौरादि आकृतिगण हो । अतः अरू कुनै उपायबाट सिद्ध भएन । त्यस्तो स्त्रीलिङ्गी ईकारान्त शब्द देखियो भने यो गौरादिगण भित्र रहेछ भन्ने जान्नु पर्दछ ।

**वयसि इति**- प्रथमवयोवाचक ह्रस्व अकारान्त शब्ददेखि स्त्रीत्व बुझिँदामा ङीप् प्रत्यय होस् ।

कुमारी ॥

**१२५२. द्विगोः ४।१।२१॥**

अदन्ताद् द्विगोर्ङीप्स्यात् । त्रिलोकी । अजादित्वात्त्रिफला । त्र्यनीका सेना ॥

**१२५३. वर्णादनुदात्तात्तोपधात्तो नः ४।१।३९॥**

वर्णवाची योऽनुदात्तान्तस्तोपधस्तदन्तादनुपसर्जनात्प्रातिपदिकाद्वा ङीप्, तकारस्य नकारादेशश्च । एनी, एता । रोहिणी,रोहिता ॥

---

**कुमारी**– कुमारवयोविशिष्टा स्त्री (कुमार अवस्था विशिष्ट स्त्री) यहाँ कुमार अवस्थावाचक अकारान्त कुमार शब्ददेखि स्त्रीत्व बुझिंदामा ङीप्प्रत्यय भयो, अकारको लोप भयो र 'कुमारी'शब्द बन्यो, सु आयो, 'कुमारी' सिद्ध भयो । यो सूत्रमा "वयस्यचरमे इति वाच्यम्" यो वार्तिक छ । यसको अर्थ 'अचरम वय- अर्थात् वृद्धावस्थाभिन्न अरू अवस्था बुझिंदामा स्त्रीलिङ्गमा वयोवाचक शब्ददेखि ङीप् प्रत्यय होस् ।' यो हुन्छ । वृद्धावस्थाभिन्न यौवनावस्थावाचक वधूट शब्द र चिरण्ट शब्ददेखि यसै वार्तिकले ङीप् भएर 'वधूटी', 'चिरण्टी'शब्द पनि बन्दछन् ।

**द्विगोरिति**– द्विगुसमासनिष्पन्न अकारान्त शब्ददेखि स्त्रीत्व बुझिंदामा ङीप् प्रत्यय होस् ।

**त्रिलोकी**- त्रयाणां लोकानां समाहारः (तीन लोकको समाहार) यो अर्थमा "तद्धितार्थोत्तरपदसमाहारे च"ले समास भयो, 'त्रिलोक' शब्द बन्यो, "सङ्ख्यापूर्वो द्विगुः"ले द्विगुसंज्ञा भयो, "अकारान्तोत्तरपदो द्विगुः स्त्रियामिष्टः" यो वार्तिकले स्त्रीत्व भयो, "द्विगोः"ले ङीप् प्रत्यय भयो, अकार लोप भयो, 'त्रिलोकी' शब्द बन्यो, सु आयो, 'त्रिलोकी' सिद्ध भयो ।

**अजादित्वादिति**– अजादिगणभित्र परेकोले त्रिफला यहाँ ङीप्लाई बाधेर टाप् प्रत्यय भयो ।

**त्रिफला**– त्रयाणां फलानां समाहारः (तीन फलको समाहार) यस विग्रहमा यहाँ पूर्व सूत्रले समास भयो, पूर्ववत् द्विगुसंज्ञा, स्त्रीत्व भयो, "द्विगोः"ले पाएको ङीप् प्रत्ययलाई बाधेर "अजाद्यतष्टाप्"ले टाप् प्रत्यय भयो 'त्रिफला' शब्द बन्यो, त्यसदेखि सु आयो ।

**त्र्यनीका सेना**– त्रयाणामनीकानां समाहारः (तीन पल्टनको समूह/तीन पल्टन भएको सेना) यहाँ पूर्ववत् समासादिकार्य भएर त्र्यनीक शब्द बनेपछि "द्विगोः"ले पाएको ङीप् प्रत्ययलाई बाधेर अजादित्वात् टाप् प्रत्यय भयो, 'त्र्यनीका' शब्द बन्यो, सु आयो 'त्र्यनीका' सिद्ध भयो ।

**वर्णादनुदात्तादिति**- हरित, लोहित आदि वर्णवाचक अनुदात्तान्त जो तकार उपधामा हुने शब्द छ, तदन्त अनुपसर्जन प्रातिपदिकदेखि स्त्रीत्व बुझिंदामा विकल्पले ङीप् प्रत्यय होस् तकारका स्थानमा नकार आदेश पनि होस् ।

**एनी/एता (चित्रविचित्र वर्ण भएकी)**– वर्णवाची एतशब्द, "वर्णानां तणतिनितान्तानाम्" यो सूत्रले त वर्ण अन्त्यमा हुनाले आद्युदात्त र "अनुदात्तं पदमेकवर्जम्"ले शेष अनुदात्त हुने हुनाले अनुदात्तान्त पनि छ, तकार उपधामा हुने पनि छ, उपसर्जन पनि छैन र स्त्रीत्व बुझिंदामा "वर्णादनुदात्तात्०"ले वैकल्पिक ङीष् प्रत्यय भयो, तकारका स्थानमा नकार पनि भयो, 'एनी' भयो, सु आयो, 'एनी' सिद्ध भयो । ङीष् प्रत्यय नभएको पक्षमा "अजाद्यतष्टाप्"ले टाप् प्रत्यय भयो, 'एता' भयो, सु आयो, 'एता' सिद्ध भयो ।

**रोहिणी/रोहिता(रातो वर्ण भएकी)**– यहाँ पनि वर्णवाची रोहित शब्द पूर्ववत् अनुदात्तान्त तोपध अनुपसर्जन प्रातिपदिक छ र स्त्रीत्व बुझिंदामा उक्त सूत्रले ङीष् प्रत्यय, नत्व, णत्व भयो, 'रोहिणी' भयो, सु आयो, 'रोहिणी' सिद्ध भयो । ङीष् प्रत्यय नभएमा पूर्ववत् टाप् प्रत्यय भयो, 'रोहिता' भयो, सु आयो, 'रोहिता' सिद्ध भयो ।

---

**१२५४. वोतो गुणवचनात् ४।१।४४॥**

उदन्ताद् गुणवाचिनो वा ङीष् स्यात् । मृद्वी, मुदुः ॥

**१२५५. बह्वादिभ्यश्च ४।१।४५॥**

एभ्यो वा ङीष् स्यात् । बह्वी, बहुः ।

**वा**.(कृदिकारादक्तिनः) । रात्री,रात्रिः । **वा**.(सर्वतोऽक्तिन्नर्थादित्येके) । शकटी । शकटिः ॥

**१२५६. पुंयोगादाख्यायाम् ४।१।४८॥**

या पुमाख्या पुंयोगात् स्त्रियां ततो ङीष् । गोपस्य स्त्री गोपी । **वा**.(पालकान्तान्न)–

---

**वोत इति**– ह्रस्व उकारान्त गुणवाचक शब्ददेखि स्त्रीत्व बुझिंदामा विकल्पले ङीष् प्रत्यय होस् ।

**मृद्वी / मृदुः(कोमल)**– यहाँ उकारान्त गुणवाचक मृदु शब्ददेखि स्त्रीत्व बुझिएकोले "वोतो गुणवचनात्"ले ङीष् प्रत्यय विकल्पले भयो 'मृदु+ई' यहाँ यण् भयो, 'मृद्वी' शब्द बन्यो, सु आयो, लोप भयो । 'मृद्वी' सिद्ध भयो । ङीष् नभएको पक्षमा जस्ताको तस्तै रह्यो, 'मृदु' भयो, सु आयो, 'मृदुः' सिद्ध भयो ।

**बह्वादीति**– बह्वादिगणपठित प्रातिपदिकदेखि स्त्रीत्व बुझिंदामा विकल्पले ङीष् प्रत्यय होस् ।

**बह्वी बहुः(धेरै)**– यहाँ बह्वादिगणपठित बहु शब्ददेखि स्त्रीत्व बुझिदामा "बह्वादिभ्यश्च"ले ङीष् प्रत्यय भयो, 'बह्वी' भयो, सु आयो, 'बह्वी' सिद्ध भयो । ङीष् प्रत्यय नभएमा 'बहु' यस्तै छ, सु आयो, 'बहुः' सिद्ध भयो ।

**(वा) कृदिकारादिति**– क्तिन् प्रत्ययभिन्न कृत् प्रत्ययको इकार अन्तमा हुने शब्ददेखि स्त्रीत्व बुझिंदामा ङीष् प्रत्यय विकल्पले होस् ।

**रात्री / रात्रिः**– राशदिभ्यां त्रिप् (४।६७) यो उणादिसूत्रले त्रिप् प्रत्यय भएर बनेको रात्रि शब्ददेखि "कृदिकारादक्तिनः"ले ङीष्प्रत्यय भयो, 'रात्रि+इ' यहाँ "यस्येति च"ले इकारको लोप भयो, 'रात्री' शब्द बन्यो, सु आयो, 'रात्री' सिद्ध भयो । ङीष् नभएको पक्षमा 'रात्रि' यस्तै रह्यो, सु आयो, 'रात्रिः' सिद्ध भयो ।

**(वा) सर्वत इति**– क्तिन् प्रत्ययको अर्थमा विधान नगरिएका संपूर्ण ह्रस्व इकारान्त कृत् प्रत्यय अन्तमा हुने शब्ददेखि स्त्रीत्व बुझिंदामा विकल्पले ङीष् हुन्छ भनेर कोही भन्छन् ।

**शकटी / शकटिः**– स्त्रीत्व बुझिएकोले "सर्वतोऽक्तिन्नर्थात्" यो गणसूत्रले शकटि शब्ददखि ङीप् प्रत्यय भयो, इकारलोप भयो, 'शकटी' शब्द बन्यो, सु आयो, 'शकटी' सिद्ध भयो । ङीप् प्रत्यय नभएको पक्षमा 'शकटि' यस्तै छ, सु आयो, 'शकटिः' सिद्ध भयो ।

**पुंयोगादिति**– जो पुरुषवाचक शब्द पुरुषको संबन्धले लक्षणाद्वारा स्त्रीको बोधक हुन्छ त्यस्तो शब्ददेखि ङीष् प्रत्यय होस् । शब्द पुंलिङ्गी हो, तर त्यसकी स्त्री भन्ने अर्थमा ङीष् हुन्छ । जस्तो नेपालीमा पुरोहितकी स्त्री पुरोहितिनी, पण्डितकी स्त्री पण्डित्नी, सेठकी स्त्री सेठानी आदि शब्द प्रयोग गरिन्छन् । त्यस्तै संस्कृतमा पनि प्रयोग गरिन्छन् ।

**गोपी**– गोपस्य स्त्री (गोठालाकी स्त्री) यो अर्थमा पतिपत्नीभाव संबन्धले गोप शब्दले गोपकी स्त्रीलाई बुझाएकोले गोप शब्ददेखि "पुंयोगादाख्यायाम्"ले ङीष् प्रत्यय भयो, अकार लोप भयो, 'गोपी' भयो, सु आयो, 'गोपी' सिद्ध भयो ।

**(वा.) पालकान्तेति**–पालक शब्द अन्तमा हुने शब्ददेखि पुंयोग आख्या बुझिंएमा ङीष् प्रत्यय नहोस् ।

---

**१२५७. प्रत्ययस्थात्कात्पूर्वस्यात इदाप्यसुपः ७।३।४४।।**

प्रत्ययस्थात्कात्पूर्वस्याकारस्येकारः स्यादापि स आप् सुपः परो न चेत् । गोपालिका । अश्वपालिका । सर्विका । कारिका । अतः किम् ? नौका । प्रत्ययस्थात् किम् ? शक्नोतीति शका । असुपः किम् ? बहुपरिव्राजका नगरी । **वा.**(सूर्याद्देवतायां चाब्वाच्यः)

---

**प्रत्ययस्थादिति–** प्रत्ययमा रहेका ककारदेखि पूर्वमा रहेका ह्रस्व अकारका स्थानमा इकार आदेश होस् आप् प्रत्यय पर भएमा, त्यो आप् प्रत्यय सुबन्तदेखि पर छैन भने ।

**गोपालिका–** गोपालकस्य स्त्री (गोठालाकी स्त्री) यहाँ गोपाल शब्ददेखि "पुंयोगादाख्यायाम्" ले ङीष् प्रत्यय पाएको थियो, "पालाकानतान्न" यो वार्तिकले निषेध भयो, "अजाद्यतष्टाप्"ले टाप् प्रत्यय दीर्घ भयो, "प्रत्ययस्थात्०"ले लका अकारका स्थानमा इकार भयो, 'गोपालिका' भयो, सु आयो, 'गोपालिका' सिद्ध भयो ।

**अश्वपालिका–** अश्वपालकस्य स्त्री (घोडा पाल्नेकी स्त्री) यहाँ अश्वपालक शब्ददेखि स्त्रीत्व बुझिँदा पुंयोगलक्षण ङीष् पाएकोमा "पालकान्तान्न" यो वार्तिकले निषेध भयो, "अजाद्यतष्टाप्" ले टाप् प्रत्यय, दीर्घ भयो, पूर्ववत् सबै प्रक्रिया भयो । सु आयो लोप भयो, 'अश्वपालिका' सिद्ध भयो ।

**सर्विका–** यहाँ सर्व शब्दको टिदेखि पूर्व "अव्ययसर्वनाम्नां०"ले अकच् प्रत्यय भयो, 'सर्वक' भयो, स्त्रीत्व बुझिंदामा त्यसदेखि टाप् प्रत्यय भयो, 'सर्वक+आ' भयो, यहाँ "प्रत्ययस्थात्०"ले 'सर्व'का अकारका स्थानमा इकार भयो, 'सर्विक+आ' दीर्घ भयो, सु आयो, 'सर्विका' सिद्ध भयो ।

**कारिका–** करोति (गर्छे) यस विग्रहमा कृधातु देखि ण्वुल् प्रत्यय भएर कारक शब्द बन्यो, स्त्रीत्वात् टाप् भयो, 'कारक+आ' यहाँ "प्रत्ययस्थात्०"ले 'कार'का अकारका स्थानमा इकार भयो, 'कारिक+आ' दीर्घ भयो, सु आयो, लोप भयो, 'कारिका' सिद्ध भयो ।

**अतः किमिति–** अतः किम् "प्रत्ययस्थात्०" यो सूत्रमा अकारका स्थानमा किन भन्नु ? नभन्ने हो भने नौका यहाँ पनि नौका औकारका स्थानमा इकार होला । सो नहोस् भनेर अकारका स्थानमा भन्यौ, यहाँ अकार छैन औकार छ र इत्व भएन नौका यस्तै रह्यो, सु आयो 'नौका' सिद्ध भयो ।

**प्रत्ययस्थात् किमिति–** प्रत्ययस्थात् किम् "प्रत्ययस्थात् कात्०" यो सूत्रमा प्रत्ययमा रहेको ककार किन भन्नु ? न भन्ने हो शक् धातुदेखि पचादित्वात् अच् प्रत्यय, टाप् प्रत्यय भएर 'शक+आ' भएपछि ककारदेखि पूर्व रहेको शका अकारको इत्व होला र शिका यस्तो अनिष्ट रूप होला । सो नहोस् भनेर प्रत्ययमा रहेको ककार भनियो, यहाँ प्रत्ययमा रहेको ककार छैन, र इत्व भएन शका यस्तै रह्यो, सु आयो, 'शका' सिद्ध भयो ।

**असुपः किमिति–** असुपः अर्थात् सुबन्तदेखि पर छैन भने किन भन्नु ? नभन्ने हो भने 'बहुपरिव्राजका नगरी' यहाँ 'परिव्राज'का अकारका स्थानमा इत्व होला, सो नहोस् भनेर 'आप् सुबन्तदेखि पर छैन भने', यसो भनियो, 'बहवः परिव्राजका यस्याम्' यो विग्रहमा 'बहु+जस्+परिव्राजक+जस्' यहाँ बहुव्रीहि समास, विभक्तिलुक् भएर 'बहुपरिव्राजक' शब्द बनेको छ अतः यो सुबन्त छ । त्यसदेखि स्त्रीत्व बुझिंदामा टाप् भयो, 'बहुपरिव्राजक+आ' भयो, यहाँ टाप् प्रत्यय सुबन्तदेखि पर रहेकोले इत्व भएन, दीर्घ भयो, 'बहुपरिव्राजका' यस्तै रह्यो ।

**सूर्यादिति–** देवता जातिकी स्त्री बुझिंदामा सूर्य शब्ददेखि पुंयोग अर्थमा चाप् प्रत्यय होस् भन्नु । चापको चकार, पकार इत्संज्ञा भएर लोप हुन्छ ।

---

सूर्यस्य स्त्री देवता सूर्या । देवतायां किम् ? । **वा**.(सूर्यागस्त्ययोश्छे च ङ्यां च यलोपः) । सूरी–कुन्ती, मानुषीयम् ॥

**१२५८. इन्द्रवरुणभवशर्वरुद्रमृडहिमारण्ययवयवनमातुलाचार्याणामानुक् ४।१।४९॥**

एषामानुगागमः स्यात् ङीष् च । इन्द्रस्य स्त्री– इन्द्राणी । वरुणानी । भवानी । शर्वाणी । रुद्राणी । मृडानी । **वा**.(हिमारण्ययोर्महत्त्वे) । महद्धिमं हिमानी ।

---

**सूर्या**– (संज्ञा अथवा सवर्णा) सूर्यस्य स्त्री देवता (सूर्यकी स्त्री, देवता) यो अर्थमा सूर्य शब्ददेखि "पुंयोगादाख्यायाम्"ले ङीप् प्रत्यय पायो, त्यसलाई बाधेर प्रकृत वार्तिकले चाप् प्रत्यय भयो, 'सूर्य+आ' भयो, दीर्घ भयो, 'सूर्या' भयो, सु आयो, 'सूर्या' सिद्ध भयो ।

**देवतायाम् किमिति**– देवताजातिकी स्त्री बुझिंदामा किन भन्नु ? नभन्ने हो भने सूर्यकी मनुष्य जातिकी स्त्री कुन्तीलाई बुझाउँदा पनि चाप् प्रत्यय होला । सो नहोस् भनेर देवताजातिकी स्त्री बुझिंदामा भनेको हो ।

**सूर्यागस्त्ययोरिति**– सूर्य शब्द र अगस्त्य शब्दको छ प्रत्यय र ङी प्रत्यय पर भएमा यकारको लोप होस् ।

**सूरी (कुन्ती)**– सूर्यस्य स्त्री मानुषी (सूर्यकी मनुष्यजातिकी स्त्री) यस अर्थमा सूर्य शब्ददेखि देवता नबुझिएकोले "सूर्याद्देवतायाम्०" यस वार्तिकले चाप् प्रत्यय भएन, पुंयोगलक्षण ङीष् प्रत्यय भयो, 'सूर्य+ई' भयो, "यस्येति च"ले अकारको लोप भयो, "सूर्यागस्त्ययोः०" यो वार्तिकले यकारको पनि लोप भयो, 'सूरी' शब्द बन्यो, सु आयो, 'सूरी' सिद्ध भयो । सुरी भनेकी (सूर्यकी पत्नी) कुन्ती हुन् र ती मानिस थिइन् भन्ने कुरा सर्वविदित छ ।

**इन्द्रेति**– इन्द्र, वरुण, भव, शर्व, रुद्र, मृड, हिम, अरण्य, यव, यवन, मातुल, आचार्य यी शब्ददेखि पुंयोगलक्षण स्त्रीत्व बुझिंदामा ङीष् प्रत्यय होस्, आनुक् आगम पनि होस् । यो सूत्र विधान गर्नुको फल- इन्द्र, वरुण आदि छ शब्दमा र मातुल शब्दमा आनुक् आगम हो । अरू चार शब्दमा ङीष् प्रत्यय र आनुक् आगम दुवै फल हुन् । उक्त सात शब्दमा पुंयोगलक्षण ङीष् प्राप्त थियो । बाँकी चार शब्द हिम, अरण्य, यव र यवन हुन् । यी शब्ददेखि पुंयोगलक्षण ङीष् पाउदैन । कुन-कुन अर्थमा ङीष् हुने भन्ने कुरा तल उल्लिखित वार्तिकहरूले स्पष्ट गरेका छन् ।

**इन्द्राणी**– इन्द्रस्य स्त्री यस अर्थमा स्त्रीत्व बुझिएकोले इन्द्र शब्ददेखि "इन्द्रवरुण०"ले ङीष् प्रत्यय, आनुक् आगम भयो, 'इन्द्र+आनी' भयो, सवर्णदीर्घ र णत्व भयो, 'इन्द्राणी' भयो, सु आयो, 'इन्द्राणी' सिद्ध भयो ।

**वरुणानी**– वरुणस्य स्त्री यस अर्थमा वरुण शब्ददेखि उक्त सूत्रले ङीष् र आनुक्आगम भयो, सवर्णदीर्घ भयो, 'वरुणानी' भयो, सु आयो, 'वरुणानी' सिद्ध भयो । यस्तै प्रकारले पूर्वसूत्रले ङीष् प्रत्यय र आनुक् आगम भएर 'भवानी', 'शर्वाणी', 'रुद्राणी', 'मृडानी' यी रूप पनि सिद्ध हुन्छन् ।

**(वा) हिमारण्येति**– हिम शब्द र अरण्य शब्ददेखि महत्ता बुझिंदामा उक्त सूत्रले ङीष् प्रत्यय र आनुक् आगम होस् ।

[१५९] **हिमानी**– महद् हिमम् (धेरै हिउँ) यस अर्थमा हिम शब्ददेखि "हिमारण्ययोर्महत्त्वे" यो वार्तिकको सहकारपूर्वक "इन्द्रवरुण"ले ङीष् प्रत्यय र आनुक् आगम भयो, सवर्णदीर्घ भयो, 'हिमानी' भयो, सु आयो, 'हिमानी' सिद्ध भयो ।

---

१५९ हिमारण्ययवशब्देषु स्त्रीत्वं लोकात् ।

महदरण्यमरण्यानी । **वा.**(यवाद्दोषे) । दुष्टो यवो यवानी । **वा.**(यवनाल्लिप्याम्) । यवनानां लिपिर्यवनानी । **वा.** (मातुलोपाध्याययोरानुग्वा) । मातुलानी, मातुली । उपाध्यायानी, उपाध्यायी । **वा.**(आचार्यादणत्वं च) आचार्यस्य स्त्री आचार्यानी ।

---

**अरण्यानी–** यस्तै प्रकारले महद् अरण्यम् यस अर्थमा पूर्ववत् उक्त सूत्रले ङीष् प्रत्यय र आनुक् आगम भएर 'अरण्यानी' भयो, सु आयो, 'अरण्यानी' सिद्ध भयो ।

**(वा.) यवादिति–** यव शब्ददेखि दोष बुझिदामा ङीष् प्रत्यय र आनुक् आगम होस् ।

**यवानी–** दुष्टो यवः (दूषित जौ) यस अर्थमा यव शब्ददेखि पूर्ववत् ङीष् प्रत्यय र आनुक् आगम भयो, 'यवानी' भयो, सु आयो, 'यवानी' सिद्ध भयो ।

**(वा) यवनादिति–** यवन शब्ददेखि लिपि अर्थ बुझिंदामा ङीष् प्रत्यय होस्, आनुक् आगम पनि होस् ।

**यवनानी–** यवनानां लिपिः (मुसलमानको अक्षर विन्यास) यस अर्थमा यवन शब्ददेखि पूर्ववत् ङीष् प्रत्यय र आनुक् आगम भयो, 'यवनानी' शब्द बन्यो, सु आयो, 'यवनानी' सिद्ध भयो ।

**(वा) मातुलेति–** मातुल शब्द र उपाध्याय शब्ददेखि ङीष् नित्य होस् आनुक आगम विकल्पले होस् ।

**मातुलानी/मातुली–** मातुलस्य स्त्री यस अर्थमा मातुल शब्ददेखि "मातुलोपाध्याययोः०" यो वार्तिकको सहकार पूर्वक "इन्द्रवरुण०" यो सूत्रले ङीष् प्रत्यय भयो, वैकल्पिक आनुक् आगम भयो, 'मातुलानी' शब्द बन्यो, सु आयो, 'मातुलानी' सिद्ध भयो । आनुक् आगम नभएको पक्षमा 'मातुल+ई' यहाँ अकारको "यस्येति च"ले लोप भयो, 'मातुली' शब्द बन्यो, सु आयो, 'मातुली' सिद्ध भयो ।

**उपाध्यायानी/उपाध्यायी–** उपाध्यायस्य स्त्री (उपाध्यायकी स्त्री) यस अर्थमा "मातुलो पाध्याययोः" यो वार्तिकले ङीष् प्रत्यय, नित्य र आनुक् आगम विकल्पले भयो, 'उपाध्यायानी' भयो, सु आयो, 'उपाध्यायानी' सिद्ध भयो । आनुक् आगम नभएका पक्षमा 'उपाध्याय+इ' यहाँ पूर्ववत् अकारको लोप भयो, 'उपाध्यायी' भयो, सु आयो, 'उपाध्यायी' सिद्ध भयो ।

**आचार्यादिति–** आचार्य शब्ददेखि पुंयोग लक्षण ङीष् होस् आचार्य शब्दको आनुक् आगम होस्, णत्व निषेध पनि होस् ।

**आचार्यानी–** आचार्यस्य स्त्री (आचार्यकी स्त्री) यस अर्थमा आचार्य शब्ददेखि "इन्द्रवरुण०"ले ङीष् प्रत्यय आनुक् आगम "आचार्यादणत्वं च"ले णत्व निषेध भयो, 'आचार्यानी' भयो, सु आयो, 'आचार्यानी' सिद्ध भयो ।

**आचार्या–** आचर्यते गुरुत्वेन सेव्यते या (गुरुभावले सेवा गरिन्छिन्) यस विग्रहमा "ऋहलोर्ण्यत्"ले कर्ममा ण्यत् प्रत्यय भयो, 'आचार्य'शब्द बन्यो, यहाँ पुंयोगलक्षण स्त्रीत्व नबुझिएकोले "इन्द्रवरुण०"ले ङीष् भएन, "अजाद्यतः०"ले टाप् प्रत्यय भयो, 'आचार्या' भयो, सु आयो, 'आचार्या' सिद्ध भयो । "स्यादाचार्याऽपि च स्वतः" (अमरकोश)

मूलमा आचार्य शब्द नराखिएको भए पनि आचार्यानी शब्दका साथ 'आचार्या' शब्द स्मरणमा आउने हुनाले यहाँ त्यसको निर्वचन गरियो ।

**उपाध्याया/उपाध्यायी–** अध्यापिका स्त्री बुझिंदा उपेत्य अधीयते अस्याः (समीपमा गएर यिनीबाट पढिन्छ) यो विग्रहमा "अपादाने स्त्रियामुपसंख्यानम् तदन्ताच्च वा ङीष्" यस वार्तिकले घञ् प्रत्यय हुन्छ, वैकल्पिक ङीष् प्रत्यय भएर 'उपाध्यायी' यो शब्द र ङीष् नभएमा टाप् प्रत्यय भएर 'उपाध्याया' यो शब्द, यी दुई शब्द पनि सिद्ध हुन्छन् ।

---

**वा.**(अर्यक्षत्रियाभ्यां वा स्वार्थे) । अर्याणी, अर्या । क्षत्रियाणी, क्षत्रिया ॥

**१२५९. क्रीतात्करणपूर्वात् ४।१।५०॥**

क्रीतान्ताददन्तात् करणादेः स्त्रियां ङीष् स्यात् । वस्त्रक्रीती । क्वचिन्न । धनक्रीता ॥

**१२६०. स्वाङ्गाच्चोपसर्जनादसंयोगोपधात् ४।१।५४॥**

असंयोगोपधमुपसर्जनं यत् स्वाङ्गं तदन्ताददन्तान् ङीष् वा स्यात् ।

---

(वा.) **अर्यक्षत्रियाभ्यामिति**– अर्य शब्द र क्षत्रिय शब्ददेखि स्वार्थ अर्थात् जाति बुझिंदामा ङीष् प्रत्यय र आनुक् आगम विकल्पले होस् ।

**अर्याणी/अर्या**– अर्यजातीया स्त्री (वैश्यजातमा उत्पन्न स्त्री) यस अर्थमा अर्य शब्ददेखि "अर्यक्षत्रियाभ्याम्०"ले वैकल्पिक ङीष् प्रत्यय, आनुक् आगम भयो, णत्व भयो, 'अर्याणी' शब्द बन्यो, सु आयो, 'अर्याणी' सिद्ध भयो । ङीष् प्रत्यय र आनुक् आगम नभएको पक्षमा टाप् प्रत्यय, दीर्घ भयो, 'अर्या' शब्द बन्यो, सु आयो, 'अर्या' सिद्ध भयो ।

**क्षत्रियाणी/क्षत्रिया**– क्षत्रियजातीया स्त्री (क्षत्रिय जातमा उत्पन्न स्त्री) यस विग्रहमा क्षत्रिय शब्ददेखि उक्त वार्तिकले ङीष् प्रत्यय र वैकल्पिक आनुक् आगम भयो, णत्व भयो, 'क्षत्रियाणी' शब्द बन्यो, सु आयो, 'क्षत्रियाणी' सिद्ध भयो । ङीष् प्रत्यय र आनुक् आगम नभएको पक्षमा टाप् प्रत्यय भयो, 'क्षत्रिया' शब्द बन्यो, सु आयो, 'क्षत्रिया' सिद्ध भयो ।

प्रकृत वार्तिकले ङीष् र आनुक् आगम नभएको पक्षमा यकार उपधामा हुने हुनाले "जातेरस्त्रीविषयात्०" लाग्दैन, "अजाद्यतष्टाप्"ले टाप् प्रत्यय हुन्छ ।

पुंयोग बुझिंदामा त "पुंयोगादाख्यायाम्"ले ङीष् हुन्छ र अर्यस्य स्त्री (वैश्यकी स्त्री) यस विग्रहमा 'अर्यी', क्षत्रियस्य स्त्री, (क्षत्रियकी स्त्री) यस विग्रहमा 'क्षत्रियी' यी शब्द बन्दछन् ।"अर्याणी स्वयमर्या स्यात् क्षत्रिया क्षत्रियाण्यपि", "पुंयोगे स्यादर्यी क्षत्रियी तथा" (अमरकोश ।)

**क्रीतादिति**– क्रीत शब्द अन्तमा हुने ह्रस्व अकारान्त करणवाचक शब्द आदिमा हुने शब्ददेखि स्त्रीत्व बुझिंदामा ङीष् प्रत्यय होस् ।

**वस्त्रक्रीती**– वस्त्रेण क्रीता (कपडाले किनिएकी) यो विग्रहमा 'वस्त्र+टा+क्रीत' यहाँ "कर्तृकरणे कृता०"ले "गतिकारकोपपदानां०" यो वार्तिक लगाएर सुप् नआउदै समास भयो र 'वस्त्रक्रीत' भयो, यस देखि स्त्रीत्व बुझिएकोले "क्रीतात्करणपूर्वात्"ले ङीष् प्रत्यय भयो, 'वस्त्रक्रीती+ई' भयो, यहाँ "यस्येति च"ले अकारको लोप भयो, 'वस्त्रक्रीती' शब्द बन्यो, सु आयो, 'वस्त्रक्रीत' सिद्ध भयो ।

**क्वचिन्नेति**– कहीं ङीष् हुँदैन । 'कहीं ङीष् हुँदैन', यो भनाइभित्र रहस्य छ । "कर्तृकरणे कृता बहुलम्" यो सूत्रमा बहुल ग्रहण गरेको हुनाले "गतिकारकोपपदानां" यो वार्तिक कहीं कहीं लाग्दैन र सुबन्तसँग समास हुन्छ । संख्याको उपस्थिति भएपछि मात्र सुप् प्रत्यय आउँछन् । संख्याको उपस्थितिभन्दा पहिले नियमतः लिङ्गको उपस्थिति हुन्छ । किनकि स्वार्थ, द्रव्य, लिङ्ग, सङ्ख्या, कारक, यिनीहरूको क्रमिक उपस्थिति हुन्छ । अतः सुप आउनु भन्दा पहिले लिङ्गको उपस्थिति हुन्छ र लिङ्गबोधक टाप् प्रत्यय हुन्छ, अनि सुप आउँछ । त्यस्तो कहाँ हुन्छ त ? धनेन क्रीता (धनले किनिएकी) भन्दा यहाँ 'धन+टा+क्रीत' यहाँ "कर्तृकरणे कृता०"ले सुबन्त आउनुभन्दा पहिले समास भएन, समास नभएपछि "क्रीतात्करणपूर्वात्"ले ङीष् भएन टाप् प्रत्यय भयो, सु आयो, 'धन+टा+क्रीता+सु'को समास भयो, 'धनक्रीता' शब्द बन्यो, अनि अकारान्त प्रातिपदिक नहुनाले ङीष् भएन ।

**स्वाङ्गादिति**– संयोग उपधामा नहुने, जो उपसर्जन (गौण) स्वाङ्गवाचक अकारान्त प्रातिपदिक छ,

केशानतिक्रान्ता–अतिकेशी, अतिकेशा । चन्द्रमुखी, चन्द्रमुखा । असंयोगोपधात्किम् ? सुगुल्फा । उपसर्जनात्किम् ? शिखा ॥

**१२६१. न क्रोडादिबह्वचः ४।१।५६॥**

क्रोडादेर्बह्वचश्च स्वाङ्गान्न ङीष् ।

---

त्यसदेखि स्त्रीत्व बुझिंदामा विकल्पले ङीष् प्रत्यय होस् । यहाँ स्वाङ्ग शब्द पारिभाषिक छ । स्वाङ्ग भनेको आफ्नो अङ्ग भन्ने अर्थ यहाँ होइन । स्वाङ्ग तीन प्रकारको छ स्वाङ्गको परिभाषा तल दिइएको छ ।

१ 'अद्रवं मूर्तिमत् स्वाङ्गं प्राणिस्थमविकारजम्' । जो द्रव (झोल) पदार्थ छैन, विकारबाट उत्पन्न पनि छैन र मूर्तिमान् भएर प्राणीमा रहेको छ त्यो स्वाङ्ग हो ।

२ 'अतत्स्थं तत्र दृष्टं च' । त्यहाँ नहुने भएपनि त्यहाँ जो देखिन्छ अर्थात् प्रथमलक्षणका सबै बुँदा घट्ने अर्थात् अहिले प्राणीमा नरहेको भएपनि प्राणीमा रहेको देखिने पदार्थ स्वाङ्ग नै हुन्छ ।

३ 'तेन चेत्तत्तथा युतम्' प्राणीको अङ्ग जस्तै बनेर अप्राणी (निर्जीव प्रतिमा आदि) मा रहने पनि स्वाङ्ग कहिन्छ ।

**अतिकेशी / अतिकेशा–** केशान् अतिक्रान्ता (केशहरूलाई अतिक्रमण गर्ने स्त्री) यस विग्रहमा तत्पुरुष समास भएर 'अतिकेश' शब्द बन्यो यहाँ केश शब्द प्रथमलक्षण अनुसार स्वाङ्ग पनि छ र गौण पनि छ, अतः "स्वाङ्गाच्चोपसर्जनात्०"ले वैकल्पिक ङीष् प्रत्यय भयो, 'अतिकेशी' सु आयो, 'अतिकेशी' सिद्ध भयो । ङीष् प्रत्यय नभएमा टाप् प्रत्यय भयो, 'अतिकेशा' भयो, सु आयो, 'अतिकेशा' सिद्ध भयो ।

**चन्द्रमुखी / चन्द्रमुखा–** चन्द्र इव मुखं यस्या (चन्द्र जस्तै छ मुख जसको) यो विग्रहमा यहाँ 'चन्द्र+सु+मुख+सु', यो स्थितिमा "अनेकमन्यपदार्थे"ले बहुव्रीहिसमास, विभक्तिलुक् भएर 'चन्द्रमुख' शब्द भयो, यहाँ मुखशब्द प्रथमलक्षण अनुसार स्वाङ्गवाचक छ । बहुव्रीहिसमासमा अन्य पदार्थ प्रधान भएकोले उपसर्जन पनि छ संयोग उपधामा पनि छैन र अकारान्त मुखशब्दान्त प्रातिपदिक चन्द्रमुख शब्ददेखि प्रकृतसूत्रले वैकल्पिक ङीष् प्रत्यय भयो, 'चन्द्रमुखी' भयो, सु आयो, 'चन्द्रमुखी' सिद्ध भयो । ङीष् प्रत्यय नभएको पक्षमा "अजाद्यतष्टाप्"ले टाप् प्रत्यय भयो, 'चन्द्रमुखा' भयो, सु आयो, 'चन्द्रमुखा' सिद्ध भयो ।

**असंयोगोपधात् किमिति–** उक्त सूत्रमा संयोग उपधामा नहुने किन भन्नु ? नभन्ने हो भने शोभनौ गुल्फौ यस्याः (राम्रा छन् गोलीगाँठा जसका) यो विग्रहमा बहुव्रीहि समास भएर 'सुगुल्फ' शब्द बन्यो, यहाँ स्वाङ्गवाचक उपसर्जन, अदन्त, 'गुल्फ'शब्द अन्तमा हुने प्रातिपदिक छ र ङीष् प्रत्यय होला । सो नहोस् भनेर संयोग उपधामा नहुने भनियो । यहाँ सुगुल्फ शब्द संयोग उपधामा हुनेछ र वैकल्पिक ङीष् प्रत्यय भएन, "अजाद्यतः०"ले टाप् प्रत्यय भयो, 'सगुल्फा' भयो ।

**उपसर्जनात् किमिति–** यो सूत्रमा उपसर्जनात् किन भन्नु ? नभन्ने हो भने शोभना शिखा (राम्रो टुप्पी) यो विग्रहमा सु उपसर्ग पूर्वक शीङ् धातुदेखि औणादिक ख प्रत्यय भयो, यो शिख शब्द स्वाङ्ग (टुप्पी)लाई कहने हुँदा यहाँ वैकल्पिक ङीष् होला । सो नहोस् भनेर उपसर्जनात् भनियो, उपसर्जनात् भनेपछि शिख यो उपसर्जन छैन, मुख्य नै छ र ङीष् प्रत्यय भएन, टाप् प्रत्यय भयो, 'शिखा' भयो, सु आयो, 'शिखा' सिद्ध भयो ।

**न क्रोडादीति–** क्रोडादिगणमा पठित शब्द र [१६०] बह्वच् (धेरै अच हुने) शब्ददेखि प्रकृतसूत्रले

---

१६० दुई अच् भन्दा बढी अच् भएको शब्द ।

कल्याणक्रोडा । आकृतिगणोऽयम् । सुजघना ॥

१२६२. **नखमुखात्संज्ञायाम् ४।१।५८॥**

न ङीष् ॥

१२६३. **पूर्वपदात्संज्ञायामगः ८।४।३॥**

पूर्वपदस्थान्निमित्तात्परस्य नस्य णः स्यात् संज्ञायाम्, न तु गकारव्यवधाने । शूर्पणखा । गौरमुखा । संज्ञायां किम् ? ताम्रमुखी कन्या ।

---

पाएको ङीष् प्रत्यय नहोस् ।

**कल्याणक्रोडा–** कल्याणं [१६१] क्रोडमस्या (छातीमा कल्याण सूचक चिन्ह छ जसको) यस विग्रहमा बहुव्रीहिसमास भएर 'कल्याणक्रोड'शब्द बन्यो, यसदेखि "स्वाङ्गाच्चोपसर्जनात्०" ले वैकल्पिक ङीष् पाएकोमा "न क्रोडादिबह्वचः"ले निषेध भयो, "अजाद्यतष्टाप्"ले टाप् प्रत्यय भयो, 'कल्याणक्रोडा' भयो, सु आयो 'कल्याणक्रोडा' सिद्ध भयो ।

**आकृतिगण इति–** यो क्रोडादि आकृतिगण हो । अतः एव जघन शब्द पनि क्रोडादिभित्र पर्दछ ।

**सुजघना–** सुष्ठु जघनं यस्याः (राम्रो छ जाँघ जुन स्त्रीको) यो विग्रहमा बहुव्रीहिसमास भएर 'सुजघन'शब्द बन्यो, यहाँ स्त्रीत्व बुझिएकोले सुजघन शब्ददेखि "स्वाङ्गाच्चोपसर्जनादसंयोगोपधात्"ले ङीष् प्रत्यय पाएकोमा "न क्रोडादिबह्वचः"यो सूत्रले जघन शब्द बह्वच् हुनाले निषेध भयो, ङीष् प्रत्ययको निषेध भएपछि "अजाद्यतष्टाप्"ले टाप् प्रत्यय भयो, 'सुजघना'शब्द बन्यो, सु आयो, 'सुजघना' सिद्ध भयो ।

**नखमुखादिति–** संज्ञा बुझिंदामा नख शब्द र मुख शब्द अन्तमा हुने प्रातिपदिक देखि ङीष् प्रत्यय नहोस् ।

**पूर्वपदादिति–** पूर्वपदमा रहेका निमित्त देखि पर रहेका नकारका स्थानमा णकार आदेश होस्, संज्ञा बुझिँदामा, गकारले व्यवधान भएमा त नहोस् ।

**शूर्पणखा–** शूर्पाणीव नखानि अस्याः (सुपा जस्ता छन् नङ् यसका) यो विग्रहमा बहुव्रीहिसमास भएर 'शूर्पनख'शब्द बन्यो, यहाँ स्त्रीत्व बुझिएकोले शूर्पनखशब्ददेखि "स्वाङ्गाच्चोपसर्जनात्"ले वैकल्पिक ङीष् प्रत्यय पाएकोमा "नखमुखात् संज्ञायाम्" यो सूत्रले संज्ञा (रावणकी बहिनीको नाम) बुझिएकोले ङीष् प्रत्ययको निषेध भयो, "अजाद्यतष्टाप्"ले टाप् प्रत्यय भयो, प्रकृतसूत्र "पूर्वपदात्संज्ञायामगः"ले पूर्वपदमा रहेको रेफदेखि पर रहेको गकारले व्यवहित नभएको नखाको नकार छ र त्यसका स्थानमा णकार आदेश भयो, 'शूर्पणखा'शब्द बन्यो, सु आयो, लोप भयो, 'शूर्पणखा' सिद्ध भयो ।

**गौरमुखा–** गौरं मुखं यस्याः (गोरो छ मुख जसको) यो विग्रहमा बहुव्रीहिसमास भएर 'गौरमुख'शब्द बन्यो, गौरमुख शब्ददेखि "स्वाङ्गाच्चोपसर्जनात्"ले वैकल्पिक ङीष् प्रत्यय पाएमा "नखमुखात्संज्ञायाम्"ले निषेध भयो, पूर्ववत् टाप् प्रत्यय भयो, 'गौरमुखा'शब्द बन्यो, सु आयो, 'गौरमुखा' सिद्ध भयो । 'गौरमुखा' यो पनि कुनै स्त्रीको नाम हो ।

**संज्ञायां किम्–** "नखमुखात्संज्ञायाम्" यो सूत्रमा संज्ञा बुझिँदामा ङीष् प्रत्यय नहोस् किन भन्नु ? नभन्ने हो भने, ताम्रमुखी यहाँ ङीष् प्रत्यय होला । सो नहोस् भनेर संज्ञा बुझिँदामा ङीष् प्रत्यय नहोस् भनियो । ताम्रमुखी यहाँ संज्ञा बुझिँदैन र यो सूत्रले निषेध भएन "स्वाङ्गाच्चोपसर्जनात्"ले ङीष् प्रत्यय भयो, 'ताम्रमुखी' सिद्ध भयो । ङीष् प्रत्यय नभएको पक्षमा टाप् प्रत्यय भयो, 'ताम्रमुखा'

---

१६१ 'न ना क्रोडं भुजान्तरम्' (अमरकोश)

**१२६४. जातेरस्त्रीविषयादयोपधात् ४।१।६३॥**

जातिवाचि यन्न च स्त्रियां नियतमयोपधं ततः स्त्रियां ङीष् स्यात् । तटी । वृषली । औपगवी ॥

---

यो रूप पनि हुन्छ । यसको प्रयोग –ताम्रमुखी, ताम्रमुखा वा कन्या (रातोमुख भएकी कुमारी)

**जातेरस्त्रीति-** जो जातिवाचक शब्द स्त्रीलिङ्गमा नियत छैन, यकार उपधामा हुने पनि छैन, त्यस्ता शब्ददेखि स्त्रीत्व बुझिँदामा ङीष् प्रत्यय होस् ।

भाष्यकारले यहाँ तीन प्रकारको जातिको परिकल्पना गर्नुभएको छ ।

**"आकृतिग्रहणा जातिर्लिङ्गानां च न सर्वभाक् ।**
**सकृदाख्यातनिर्ग्राह्या**[१६२] **गोत्रं च चरणैः सह ॥"**

१. **आकृतिग्रहणा जातिः**– आकृति भनेको अवयवसंस्थान हो जसबाट अवयवसंस्थान अभिव्यक्त हुन्छ त्यो जाति हो । जस्तै मनुष्यत्व, गोत्व आदि ।

ब्राह्मणत्व वृषलत्व आदि जाति अवयवसंस्थानाभिव्यङ्ग्य नहुनाले त्यसको सङ्ग्रहको निमित्त भनियो-

२. **लिङ्गानां च न सर्वभाक् । सकृदाख्यातनिर्ग्रह्या-** सबै लिङ्ग नबुझाउने, एक व्यक्तिको कथन गरेपछि अर्को व्यक्ति बुझिने जाति हो । जस्तै यौटा ब्राह्मणको अथवा वृषलको परिभाषा गरेपछि अरू पनि त्यस्तै भन्ने बुझिने हुनाले ब्राह्मणत्व, वृषलत्व आदिलाई जाति भनिन्छ । यहाँ शुक्ल आदि गुणवाचक शब्द लाई हटाउन सबै लिङ्ग नबुझाउने भनिएको हो ।

औपगव कठत्व आदिलाई जातिभित्र संग्रह गर्नको निमित्त-

३. **गोत्र च चरणैः सह-** भनिएको छ । अपत्य प्रत्ययान्त शब्द र चरण (शाखा)हरूको अध्येतालाई बुझाउने शब्द पनि जाति मानिन्छ भनेको हो । यसबाट बह्वृच, माध्यन्दिनीय आदि शाखाका अध्येताहरूको ग्रहण हुन्छ ।

यसरी तीनप्रकारको जातिको निर्वचन गरेपछि तट शब्द सर्वलिङ्गी भए पनि संस्थानाभिव्यङ्ग्य हुनाले जाति ठहर्छ । वृषल आदि शब्द सर्वलिङ्गी छैनन्, सकृदाख्यातनिर्ग्राह्य पनि छन् र जातिवाचक हुन् । औपगव आदि शब्द अपत्यप्रत्ययान्त हुनाले जातिवाचक भए । कठ आदि शब्द चरण अर्थात् शाखाध्येतृप्रत्ययान्त छन् र जाति मानिए । क्रमशः–यिनका उदाहरण तल दिइन्छ ।

**तटी**– तट शब्द प्रथम लक्षण अनुसार जातिवाचक शब्द हो यो शब्द स्त्रीलिङ्गमा नियत छैन यसका उपधामा यकार छैन स्त्रीत्व बुझिन्छ र "जातेरस्त्रीविषयात्"ले ङीष् प्रत्यय भयो, पूर्ववत् 'तटी' सिद्ध भयो ।

**वृषली**– वृषल शब्द द्वितीयलक्षण अनुसार सर्वलिङ्गी छैन, यौटा वृषलको परिभाषा गरेपछि अरूको पनि त्यस्तै प्रकार बुझिन्छ, नियतस्त्रीलिङ्गी छैन, यकार उपधामा हुने पनि छैन र प्रकृत सूत्रले ङीष् भयो, पूर्ववत् 'वृषली' भयो ।

**औपगवी**– उपगोरपत्यम् स्त्री (उपगुको सन्तति स्त्री) यस विग्रहमा "तस्यापत्यम्"ले अण् प्रत्यय भएर बनेको औपगव शब्द तृतीय लक्षणानुसार अपत्य प्रत्ययान्त छ, नित्यस्त्रीलिङ्गी पनि

---

१६२ यहाँ गोत्र शब्द सन्तति अर्थमा छ "सन्ततिर्गोत्रजननकुलान्यभिजनान्वयौ" यो अमरकोश अनुसार गोत्रशब्द सन्ततिको पर्यायवाची छ । यस श्लोकमा व्याकरण सूत्र "अपत्यं पौत्रप्रभृति गोत्रम्" अनुसारको गोत्र लिइएको छैन ।

कठी । बह्वृची । जातेः किम् ? मुण्डा । अस्त्रीविषयात्किम् ? बलाका । अयोपधात्किम् ? क्षत्रिया । **वा.**(योपधप्रतिषेधे हयगवयमुकयमनुष्यमत्स्यानामप्रतिषेधः) । हयी ।

---

छैन्, यकार उपधामा पनि छैन र "टिड्ढाणञ्०"ले पाएको ङीप्लाई बाधेर प्रकृत सूत्रले ङीष् प्रत्यय भयो, 'औपगवी' भयो, सु आयो, 'औपगवी' सिद्ध भयो ।

**कठी**– कठेन प्रोक्तम् अधीते वेत्ति वा यस विग्रहमा "तेन प्रोक्तम्"को अर्थमा "कलापिवैशम्पायनान्तेवासि०"ले गरेको णिनि प्रत्ययको "कठचरकाल्लुक्"ले लुक् भयो, अध्येतृवेदितृ अर्थको अण् प्रत्ययको "प्रोक्ताल्लुक्"ले लुक् भएर कठ शब्द भयो । यो कठ शब्दले तृतीय लक्षण अनुसार कठशाखाको अध्येता अथवा वेत्तालाई बुझाउँछ नित्यस्त्रीलिङ्गी पनि छैन, यसको उपधामा यकार पनि छैन र यहाँ स्त्रीत्व बुझिएकोले उक्त सूत्रले ङीष् प्रत्यय भयो, 'कठी' भयो, सु आयो, 'कठी' सिद्ध भयो ।

**बह्वृची**– बह्व्यः ऋचोऽध्येतव्या यैः (धेरै ऋचा पढनु पर्छ जसले) यस अर्थमा बहुव्रीहि समास भएर बह्वृच शब्द बन्दछ । बह्वृच भन्ने एउटा शाखा नै हो । यहाँ "बह्व्यः ऋचोऽध्येतव्या यया" (धेरै ऋचा पढनु पर्छ जुन स्त्रीले) यस्तो विग्रह गरेमा पनि 'बह्वृच' शब्द बन्दछ । यो बह्वृच शब्द नित्य स्त्रीलिङ्गी पनि छैन तर यहाँ स्त्रीत्व बुझिन्छ, यहाँ शाखाध्येतृवाचक पनि हो, यकार उपधामा भएको पनि छैन र उक्त सूत्रले ङीष् प्रत्यय भयो, 'बह्वृची' भयो, सु आयो, 'बह्वृची' सिद्ध भयो ।

**पुराकल्पे तु नारीणां मौञ्जीबन्धनमिष्यते ।**
**अध्यापनं च वेदानां सावित्रीवचनं तथा ॥**

यो वचन अनुसार पहिलेको कल्पमा स्त्रीहरूले पनि वेद पढ्थे भन्ने कुरा प्रमाणित हुन्छ । त्यही कुरा यहाँ वृत्तिकारले उदाहरणमा स्मरण गरेका छन् ।

**जातेःकिमिति**– जातेः किम् ? "जातेरस्त्रीविषयादयोपधात्" यस सूत्रमा जातिवाचक शब्ददेखि किन भन्नु ? नभन्ने हो भने मुण्डा यहाँ मुण्ड शब्ददेखि ङीष् भएर मुण्डी यस्तो अनिष्ट रूप होला, सो नहोस् भनेर जातिवाचकदेखि भनियो, मुण्ड शब्द जातिवाचक छैन र ङीष् प्रत्यय भएन टाप् प्रत्यय भयो, सु आयो 'मुण्डा' सिद्ध भयो ।

**अस्त्रीविषयात् किमिति**– अस्त्रीविषययात् किम् ? प्रकृतसूत्रमा नित्यस्त्रीलिङ्गमा वर्तमान छैन भने किन भन्नु ? नभन्ने हो भने नित्यस्त्रीलिङ्गमा वर्तमान वकपङक्तिवाचक बलाक शब्ददेखि ङीष् प्रत्यय होला र 'बलाकी' यस्तो अनिष्ट रूप सिद्ध होला, सो नहोस् भनेर नित्यस्त्रीलिङ्गमा नरहने भनियो र यहाँ ङीष् प्रत्यय भएन टाप् प्रत्यय भयो, सु आयो, 'बलाका' सिद्ध भयो ।

**अयोपधात् किमिति**– अयोपधात् किम् ? प्रकृतसूत्रमा यकार उपधामा नहुने किन भन्नु ? न भन्ने हो यकार उपाधामा हुने क्षत्रिय शब्ददेखि स्त्रीत्व बुझिदामा ङीष् भएर 'क्षत्रियी' यस्तो अनिष्ट रूप होला यकार उपधामा नहुने भनेकोले यहाँ ङीष् प्रत्यय भएन टाप् प्रत्यय भयो, सु आयो, 'क्षत्रिया' सिद्ध भयो ।

**(वा.) योपधिति**– योपध शब्दको निषेधमा हय, गवय, मुकय, मनुष्य, मत्स्य यी शब्ददेखि ङीष् प्रत्ययको निषेध नहोस् अर्थात् ङीष् प्रत्यय होस् भन्नु ।

**हयी**– हयजातीया स्त्री (हय जातकी स्त्री) यस अर्थमा हयशब्द यकार उपधामा हुने हुनाले "जातेरस्त्रीविषयात्"ले ङीष् प्रत्यय नपाएकोमा यस वार्तिकले यकार उपधामा भए पनि हय

---

गवयी । मुकयी । हलस्तद्धितस्येति यलोपः । मनुषी । **वा.**(मत्स्यस्य ङ्याम्) । यलोपः । मत्सी ॥

**१२६५. इतो मनुष्यजातेः ४।१।६५॥**

ङीष् । दाक्षी ।

**१२६६. ऊङुतः ४।१।६६॥**

उदन्तादयोपधान्मनुष्यजातिवाचिनः स्त्रियामूङ् स्यात् । कुरूः ।

---

शब्ददेखि ङीष् प्रत्यय भयो, सु आयो, 'हयी' सिद्ध भयो । यस्तै प्रकारले प्रकृत वार्तिकले ङीष् प्रत्यय भएर गवयजातीया स्त्री यो अर्थमा 'गवयी' शब्द र मुकयजातीया स्त्री यस अर्थमा 'मुकयी' शब्द पनि बन्दछ । मुकय भनेको एक पशुविशेष हो ।

**हलस्तद्धितेति–** मनुष्य शब्दमा "हलस्तद्धितस्य" यो सूत्रले यकारको लोप हुन्छ ।

**मनुषी–** मनुष्यजातीया स्त्री (मनुष्यजातकी स्त्री) यस अर्थमा मनुष्य शब्द यकार उपधामा हुने हुनाले "जातेरस्त्रीविषयात्०"ले ङीष् प्रत्यय नपाएकोमा "योपधप्रतिषेधे०" यो वार्तिकले ङीष् प्रत्यय भयो, "यस्येति च"ले अकारको लोप भयो, "हलस्तद्धितस्य"ले यकारको लोप भयो, 'मनुषी' शब्द बन्यो, सु आयो, 'मनुषी' सिद्ध भयो ।

मानुष शब्ददेखि त "जातेरस्त्रीविषयात्०"ले ङीष्प्रत्यय हुन्छ र 'मानुषी' हुन्छ ।

**(वा.) मत्यस्येति–** ङी प्रत्यय पर भएमा मत्स्यशब्दका यकारको लोप होस् ।

**मत्सी–** मत्स्यजातीय स्त्री (माछा जातकी स्त्री) यस अर्थमा मत्स्य शब्द योपध हुनाले "जातेरस्त्रीविषयात्०"ले ङीष् प्रत्यय नपाएकोमा "योपध प्रतिषेधे०"यो वार्तिकले ङीष् प्रत्यय भयो, "यस्येति च"ले अकारको लोप भयो, "मत्स्यस्य ङ्याम्"ले यकारको लोप भयो, 'मत्सी' भयो, सु आयो, 'मत्सी' सिद्ध भयो । वस्तुतस्तु "मत्स्यस्य ङ्याम्" यो वार्तिक ज्ञापक भएपछि मत्स्य शब्ददेखि ङीष् प्रत्यय हुन्छ "योपधप्रतिषेधे०" यस वार्तिकमा मत्स्य शब्द पढ्नु पर्दैन ।

मनुष्य शब्दको यकार "मनोर्जातावञ्यतौ०"ले यत् प्रत्यय गरेर भएको हुनाले तद्धित प्रत्ययको यकार हो, मत्स्य शब्दमा तद्धित प्रत्ययको यकार हैन र "हलस्तद्धितस्य"ले लोप पाउँदैन, अतः "मत्स्यस्य ङ्याम्" यो वार्तिक आरम्भ गरेको हो ।

**इत इति–** मनुष्यजातिवाचक इकारान्त प्रातिपदिकदेखि ङीष् प्रत्यय होस् स्त्रीत्व बुझिँदामा ।

**दाक्षी–** दक्षस्यापत्यम् स्त्री (दक्षकी छोरी सन्तान) यस विग्रहमा दक्ष शब्ददेखि अपत्य अर्थमा इञ्प्रत्यय भयो, 'दाक्षि' भयो, 'दाक्षि' यो मनुष्यजातिवाचक इकारान्त प्रातिपदिक छ र स्त्रीत्व बुझिँदामा "इतो मनुष्यजातेः"ले ङीष् प्रत्यय भयो, इकारको "यस्येति च"ले लोप भयो, 'दाक्षी' भयो, सु आयो, 'दाक्षी' सिद्ध भयो ।

"जातेरस्त्रीविषयात्" यो सूत्रबाट 'जातेः' यो अनुवृत्ति छँदाछँदै पुनः जातिग्रहण गरेको हुनाले यहाँ यकारोपध प्रातिपदिकदेखि पनि ङीष् प्रत्यय हुन्छ र 'औदमेयी' रूप बन्दछ ।

उदमेयस्य अपत्यं स्त्री (उदमेय जातकी छोरी सन्तान) यो विग्रह हो ।

**ऊङुत इति–** यो सूत्रमा भने अयोपधात्को अनुवृत्ति आउँछ, ह्रस्व उकार अन्तमा हुने र यकार उपधामा नहुने मनुष्य जातिवाचक शब्ददेखि स्त्रीत्व बुझिँदामा ऊङ् प्रत्यय होस् ।

**कुरूः–** कुरुजातेः स्त्री (कुरुजातिकी स्त्री) यस विग्रहमा यो कुरु शब्द कुरुजातिवाचक छ, ह्रस्व उकारान्त छ यकार उपधामा पनि छैन, स्त्रीत्व बुझिँदामा "ऊङुतः"ले ऊङ् प्रत्यय भयो, 'कुरु+ऊ' यहाँ "अकःसवर्णे०"ले दीर्घ भयो, 'कुरू' भयो, सु आयो, 'कुरूः' सिद्ध भयो ।

